




यस पवित्र कुरआनको अनुवाद र ब्याख्यालाई प्रकाशित गर्नुको शुभ आज्ञा दिने अवसर सउदी अरबको राजा खादेमुल हरमैन शरीफैन शाह सलमान बिन अब्दुल अजीज आले सऊदलाई प्राप्त भयो ।






إعداد:
جمعية أهل الحديث المركزية
بنيبال

مُجمّع الملك فهد لطباعة المصحف الشريف
بالمدينة المُنوّرة

खादेमुल हरमैन शरीफैन शाह सल्मान बिन अब्दुल अजीज आले सऊदको तर्फबाट अल्लाहको कृपा एवं प्रसन्नता प्राप्त गर्नुको निम्ति अल्लाहकोलागि वकफ छ यसलाई बिक्रीगर्नु वर्जित छ।

**निःशुल्क वितरणको लागि मात्र।**

# पवित्र कुरआनको अनुवाद नेपाली भाषामा

केन्द्रीय अहलेहदीस संघ नेपाल

**शाह फहद कुरआन करीम प्रिन्टिङ्ग कोम्पलेक्स**
मदीना मुनव्वरा

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

# مقدمة

بقلم معالي الشيخ الدكتور

**عبد اللطيف بن عبد العزيز بن عبد الرحمن آل الشيخ**

وزير الشؤون الإسلامية والدعوة والإرشاد

المشرف العام على المجمع

الحمد لله رب العالمين، القائل في كتابه الكريم:

﴿... قَدۡ جَآءَكُم مِّنَ ٱللَّهِ نُورٞ وَكِتَٰبٞ مُّبِينٞ ﴾.

والصلاة والسلام على أشرف الأنبياء والمرسلين، نبينا محمد صَلَّى ٱللَّهُ عَلَيۡهِ وَسَلَّمَ، القائل: «**خيركُم مَن تعلَّم القرآن وعلَّمه**».

أما بعد:

فإنفاذاً لتوجيهات خادم الحرمين الشريفين، الملك سلمان بن عبدالعزيز آل سعود -حفظه الله- بالعناية بكتاب الله، والعمل على تيسير نشره، وتوزيعه بين المسلمين، في مشارق الأرض ومغاربها، وتفسيره، وترجمة معانيه إلى مختلف لغات العالم.

وإيماناً من وزارة الشؤون الإسلامية والدعوة والإرشاد بالمملكة العربية السعودية، بأهمية ترجمة معاني القرآن الكريم، إلى جميع لغات العالم المهمة؛ تسهيلاً لفهمه على المسلمين الناطقين بغير العربية، وتحقيقاً للبلاغ، المأمور به في قوله صَلَّى ٱللَّهُ عَلَيۡهِ وَسَلَّمَ: «**بلِّغوا عنِّي ولو آية**».

وخدمةً لإخواننا الناطقين باللغة النيبالية، يطيب لمجمع الملك فهد لطباعة المصحف الشريف بالمدينة المنورة، أن يقدم للقارئ الكريم هذه الترجمة إلى اللغة النيبالية، التي قامت بها جمعية أهل الحديث المركزية بنيبال، وراجعها من قبل المجمع الشيخ عتيق الرحمن محمد إدريش خان.

ونحمد الله سبحانه وتعالى أن وفق لإنجاز هذا العمل العظيم، الذي نرجو أن يكون خالصاً لوجهه الكريم، وأن ينفع به الناس.

إننا لندرك أن ترجمة معاني القرآن الكريم -مهما بلغت دقتها- ستكون قاصرة عن أداء المعاني العظيمة التي يدل عليها النص القرآني المعجز، وأن المعاني التي تؤديها الترجمة إنما هي حصيلة ما بلغه علم المترجم في فهم كتاب الله الكريم، وأنه يعتريها ما يعتري عمل البشر كلّه من خطأ ونقص.

ومن ثم نرجو من كل قارئ لهذه الترجمة أن يوافي مجمع الملك فهد لطباعة المصحف الشريف بالمدينة النبوية، بما قد يجده فيها من خطأ أو نقص أو زيادة؛ للإفادة من الاستدراكات في الطبعات القادمة إن شاء الله.

والله الموفق، وهو الهادي إلى سواء السبيل، اللّٰهُمَّ تقبل منّا إنّك أنت السميع العليم.



बिस्मिल्लाहिर्रहमानिर्रहीम

# मन्तब्य

महामहीम शैख डाक्टर अब्दुल् लतीफ बिन अब्दुल अजीज
बिन अब्दुर्रहमान आले शैखको कलमबाट
मन्त्री :इस्लामी कयाकलाप अथवा प्रचार प्रसार मन्त्रालय
महासचिव : मुजम्मउल मलिक फहद छापाखाना

सबै प्रकारको प्रशंसा अल्लाहको लागि छ जुन सम्पूर्ण संसारको पालनकर्ता हो,र जसले आफनो पवित्र कुरआनमा भनेछ :

﴿... قَدۡ جَآءَكُم مِّنَ ٱللَّهِ نُورٞ وَكِتَٰبٞ مُّبِينٞ﴾.

अर्थ: नि:संदेह तिमीहरू समक्ष अल्लाहको तर्फबाट नूर (प्रकाश) र प्रष्ट किताब पुस्तक आई पुग्यो

र अल्लाहको शान्ति होस हाम्रो नबी मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि जुन सम्पूर्ण नबीहरू र रसूलहरूभन्दा सर्वोत्कृष्ट छन् । र जसले भनेछन् :

«خيركم مَن تعلّم القرآن وعلّمه».

अर्थ : तिमीहरूमध्ये सबैभंदा राम्रो व्यक्ति ती हुन जुन स्वयं कुरआनको अध्यन गर्छन् र आर्कालाई सिकाउ छन् ।

तत् पश्चात: हरमैन शरीफैनको खादिम ( सेवक ) राजा सल्मान बिन अब्दुल अजीज आले सऊदको सुझावलाई लागुगर्नुको निम्ति जुन सुझावमध्ये अल्लाहको किताब (कुरआन) लाई विशेष महत्व दिई त्यसको प्रकाशनलाई सरल बनाउनु , र पुर्वदेखी पश्चिमसम्म बस्ने मुस्लिम समुदायहरूमा नि:शुल्क वितरणगर्नु , र त्यसको व्याख्या र अनुवाद विश्वको विभिन्न भाषामागर्नु हो । र सउदी अरबको इस्लामी कयाकलाप तथा प्रचार प्रसार मन्त्राल्यको यस इक्षालाई पूर्णगर्नुको निम्ति जसमध्ये सर्वप्रथम यो हो कि कुरआन शरीफको अनुवाद विश्वको उत्कृष्ट भाषाहरूमा गर्नु ती मुस्लिमहरूको आसानीको

लागि जुन अरबी भाषा बुझ्दैनन्, र अल्लाहको रसूलको यस आदेशको पालना गर्नुको निम्त जसमा उहाले भन्नु भएछ कि:

«بلِّغوا عنِّي ولو آية»

अर्थः जसलाई मात्र एक आयतको पनि ज्ञान छ भने आर्कासम्म पुगाओस् । र आफनो नेपाली भाषाभाषी मुस्लिम भाई बहिनीहरूको सेवागर्न शुभ इक्षालिई मुजम्मउल मलिक फहद मदीना अलमुनव्वरा ( कुरआन शरीफको प्रसिद्ध प्रकाशक छापाखाना ) तपाईहरू सामु यो नेपाली भाषामा अनुवादित कुरआनलाई पेशगर्दा अति प्रसन्नता महसूस गर्छ , जसको अनुवाद अहले हदीस अलमरकजीयहः नेपालले तयार पारेको छ , र प्रकाशक ( मुजम्मउल मलिक फहद मदीना अलमुनव्वरा) को तर्फबाट सच्याउने काम शैख अतीकुर्रहमान मोहम्मद इदरीस खानले गर्नुभएको छ । र हामी यस कार्यको सफलतापूर्वक सम्पन्नतामा महान अल्लाहकको आभार प्रकट गर्दछौं, र अल्लाहसित यो प्रार्थना गर्दछौं कि अल्लाह यस महान कार्यलाई सफल पारुन्, यस आशाको साथ कि यो कार्य केवल अल्लाहको लागि होस् र यसबाट सम्पूर्ण मानवजातिलाई फाईदाहोस् ।

हामीलाई यो थाहा छ कि कुरआनको अनुवाद जति गम्भीरताले पनि गर्दा कुरआन करीमको आयत (शलोक) हरूको त्यो महान अर्थलाई दर्शाउन सकिदैन जसलाई कुरआनको आयतहरूले दर्शाउन खोजेका छन्, र जुन अर्थ अनुवादकले दर्शाउन खोजेको छ त्यो मात्र अनुवादकले अल्लाहको किताबको अर्थ बुझ्ने क्षमता र ज्ञान अनुसार आर्कोलाई बुझाउन खोजेको हो, यसले गर्दा अनुवादकको यस सराहनीय कार्यमा पनि त्यस्तै त्रुटि र कमी कमजोरी हुनसकछ जस्तो कि सबै मानवहरूको कार्यहरूमा हुन्छ , यसकारण हामी आफ्नो हरेक पाठकसित यो बिन्ति गर्छौ कि यस प्रकाशनमा केही कमी कमजोरी अथवा त्रुटि देखेमा मुजम्मउल मलिक फहदलाई निःसंकोच जानकारी गराउनु हार्दिक अनुरोध गर्छौ, जसलेगर्दा पछिल्ला संस्करणमा त्यसको सुधार गर्न सकियोस् (ईन्शाअल्लाह) , र अल्लाह नै तौफीक दिनेवाला र सोझो मार्ग दर्शाउनेवाला छ ।

हे अल्लाह हाम्रो यो कार्य कबूल गर तिमी अति सुन्नेवाला सर्वज्ञानी छौ।

# प्रस्तावना

## बिस्मिल्लाहिर्रहमानिर्रहीम

पवित्र कुरआन अल्लाहको साक्षात वाणी हो, जसलाई शब्दशः त्यसको अर्थको साथ अल्लाहले आफ्नो अन्तिम सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि अवतरित गरेका हुन्, जुनकि समस्त संसारका लागि सर्वथा दया र शुभ सूचक एवं सचेतक हुन् । र अल्लाहतिर आमन्त्रण गर्नेवाला हुनुको साथ साथै प्रकाशमान सूर्य हुन् । तपाईंहरू समक्ष कुरआनबारे संक्षेपमा केही महत्वपूर्ण ज्ञानवर्धक कुराहरू निम्नमा राखिन्छ, ध्यानदिनु होला !

**पवित्र कुरआनको बारेमा सामान्य ज्ञान**

**१- पवित्र कुरआनको परिभाषा र त्यसका नाम र विशेषताहरूको वर्णन :**

**पवित्र कुरआन:** अल्लाहको त्यो वाणी हो जुन अल्लाहको सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि शब्द र अर्थको साथ अवतरित गरियो वह्यको (प्रकाशनाको) माध्यमले जुनकि मुसहफ (ग्रन्थपाटि)मा उल्लेखित छ, सामूहिक तरिकाले वर्णन गरिएको छ, र जसको पाठनद्वारा पूजा गरिन्छ, र जसको पाठ गर्नु पनि पूजा हो ।

र अल्लाहले नै जुन आफ्नो अन्तिम सन्देष्टा मुहम्मद माथि अवतरण गरे त्यसलाई कुरआनको नामले नामाकरण गरे । जस्तोकि अल्लाहको फर्मान छः

﴿ إِنَّا نَحْنُ نَزَّلْنَا عَلَيْكَ الْقُرْآنَ تَنْزِيلًا ﴾ [الدهر: ٢٣]

अर्थः निश्चय नै हामीले अत्यन्त व्यवस्थित रूपले तपाईमाथि कुरआन अवतरित गरेका छौं । (सूरतुल् इन्सान २३)

किनकि कुरआन यसै उद्देश्यको लागि अवतरित गरिएको छ कि त्यसको पाठ गरियोस्, त्यसको अध्ययन गरियोस्, र त्यसको पाठनक्रमलाई न त्यागियोस् ।

र यस कुरआनलाई अल्लाहले किताबको नामले पनि सम्बोधन गरेको छ । जस्तोकि अल्लाहको कथन छ : [الزمر: ٢] ﴿ إِنَّا أَنْزَلْنَا إِلَيْكَ الْكِتَابَ بِالْحَقِّ ﴾

अर्थः निःसन्देह हामीले तिमीलाई सत्यताका साथ आफ्नो किताब पठाएका छौं । (सूरतुन् निसा १०५)

किनकि यसको अवतरणको उद्देश्यहरू मध्ये यो पनि हो कि यसलाई लेखियोस्, र यसको लेखाइलाई न त्यागियोस् ।

र यस कुरआनको विशेषता वर्णन गर्दै अल्लाहले भनेछ कि यो (फुर्कान) सत्य असत्य बीच फर्क गर्नेवाला हो, र यो (जिक्र) सद्उपदेश हो, र यो (हुदा) पथप्रदर्शक हो, र यो (नूर, शिफा, हकीम, मौअेजह) हो, अर्थात प्रकाश, उपचारक, तत्वदर्शी, र सदुपदेश र सिक्षा ग्रहण गर्नेहरूको लागि पाठ हो.. आदि । यस बाहेक पवित्र कुरआनका अनेकौं विशेषताहरू वर्णन छन् जुन यस ग्रन्थको भव्यता महानता एवं विशालता र परिपूर्णता माथि प्रमाणीकरण र संकेत गर्छन् ।

र मुसहफ भनेको सुहुफ शब्दबाट लिइएको छ जुन अरबी भाषाको शब्द हो र जसको अर्थ हो: ती कुराहरू जसमाथि कुरआन लेखिएको छ, र यो एउटा नाम हो जसलाई सहाबाहरूले त्यस किताबको लागि प्रयोग गरेका हुन् जसको पानाहरूमाथि कुरआन लेखिएको हुन्छ ।

र पवित्र कुरआन अल्लाहद्वारा पठाइएको वह्य (प्रकाशना) हो, जसलाई लिएर हजरत जिब्रील अलैहिस्सलामले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको हृदयमाथि अवतरण गर्नु भयो । जस्तोकि अल्लाहको फर्मान छ :

﴿ وَإِنَّهُ لَتَنْزِيلُ رَبِّ الْعَالَمِينَ * نَزَلَ بِهِ الرُّوحُ الْأَمِينُ * عَلَىٰ قَلْبِكَ لِتَكُونَ مِنَ الْمُنْذِرِينَ * بِلِسَانٍ عَرَبِيٍّ مُبِينٍ ﴾ [الشعراء: ١٩٢-١٩٥]

अर्थ :र कुनै शंका र संदेह बेगैर यो (कुरआन) संसारको पालनहारद्वारा उतारिएको हो। यसलाई विश्वसनीय फरिश्ताले लिएर आएको हो। तपाईको हृदयमा उतारियो ताकि तपाई (मानिसहरूलाई) सावधान गर्नेहरू मध्येको भइहाल्नुस्। (र) स्पष्ट अरबी भाषामा छ। (सूरतुश्शुअ्रा १९२-१९५)

र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि वह्यको अवतरण कुनै अनोठो र विचित्र कार्य होइन किनकि उहाँ जस्ता अरु विगतका सन्देष्टाहरू माथि पनि यसै प्रकार वह्य गरिदै आएको हो, र जिब्रील अलैहिस्सलाम विगतका सन्देष्टाहरू माथि पनि अल्लाहको तर्फबाट वह्य लिएर अवतरण गर्दै आएका हुन्, र अल्लाह यस विशेष धरोहरताको कार्यको लागि जसलाई चाहन्छ मनोनीत गरिबक्सन्छ। जस्तोकि अल्लाहको फर्मान छ :

﴿ٱللَّهُ يَصْطَفِى مِنَ ٱلْمَلَٰٓئِكَةِ رُسُلًا وَمِنَ ٱلنَّاسِ ۚ إِنَّ ٱللَّهَ سَمِيعٌۢ بَصِيرٌ﴾ [الحج: ٧٥]

अर्थ: अल्लाहले फरिश्ताहरू मध्येबाट र मानिसहरू मध्येबाट सन्देशवाहक रोज्दछ। निश्चय नै अल्लाह सबै कुरा सुन्दछ, देख्दछ। (सूरतुल् हज्ज ७५)

किनकि त्यस सर्व ज्ञानीलाई नै यो कुरो भलिभाँति थाहा छ कि को यस कार्यको लागि सूक्ष्म र योग्य छ, र कुन यस योग्य छैन, किनकि त्यही नै सबैको स्रष्टा हो। अल्लाहको फर्मान छ :

﴿وَرَبُّكَ يَخْلُقُ مَا يَشَآءُ وَيَخْتَارُ﴾ [القصص: ٦٨]

अर्थ: र तपाईको पालनकर्ताले जे चाहन्छ, सृष्टि गर्दछ र जसलाई चाहन्छ रोज्दछ। (सूरतुल् कसस ६८)

### २- पवित्र कुरआनको अवतरण

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि वह्यको अवतरण रमजान महिनाको १६ तारीख सोमवारको दिन सन् ६१० ई.सं. मा गारे हेरा (हेरा नामक गुफा) भित्र आरम्भ भयो, जुन गुफा मक्काको प्रसिद्ध पर्वतमा स्थित छ। हजरत जिब्रील त्यसै गुफमा निम्नका आयत (श्लोक)हरू लिएर अवतरित गरे !

﴿ٱقْرَأْ بِٱسْمِ رَبِّكَ ٱلَّذِى خَلَقَ ۞ خَلَقَ ٱلْإِنسَٰنَ مِنْ عَلَقٍ ۞ ٱقْرَأْ وَرَبُّكَ ٱلْأَكْرَمُ ۞ ٱلَّذِى عَلَّمَ بِٱلْقَلَمِ ۞ عَلَّمَ ٱلْإِنسَٰنَ مَا لَمْ يَعْلَمْ﴾ [العلق: ١-٥]

अर्थ: आफ्नो पालनकर्ताको नाम लिएर पढ, जसले सृष्टि गऱ्यो। जसले मानिसलाई रगतको थोपाबाट बनायो। तिमी पढ्दै गर तिम्रो पालनकर्ता बडो दयावान छ। जसले कलमको माध्यमबाट शिक्षा प्रदान गऱ्यो। जसले मानिसलाई त्यो ज्ञान प्रदान गऱ्यो, जुन उसले जान्दैनथ्यो। (सूरतुल् अलक १-५)

र यो ५ श्लोकहरू कुरआनका ती सर्वप्रथम श्लोकहरू हुन् जुन मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि सर्वप्रथम अवतरित गरिए।

अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम ती आयतहरूसाथ आफ्नो जहानतर्फ यस अवस्थामा फर्केर आए कि उहाँको हृदय भयले कम्पित थियो, अनि यस घटनाको विवरण आफ्नो स्वास्नी हजरत खदीजा बिन्ते खुवैलिद रजिअल्लाहो अन्हालाई सुनाउनु भयो, र भन्नु भयो: " मलाई त आफ्नो ज्यानको नै भय लागेछ" । त उहाँकी स्वास्नीले भनिन्: "कदापि यस्तो हुनेवाला छैन, बरु प्रसन्न भइजाऊ, र अल्लाहको शपथ अल्लाह कदापि तपाईलाई अपमानित गर्नेछैन, किनकि तपाई सम्बन्ध जोड्नु हुन्छ, आफन्तीहरूको हेरचाह गर्नुहुन्छ, र सत्यवान हुनुहुन्छ, र ऋणीको सहायता गर्नुहुन्छ, र अतिथिको सत्कार गर्नुहुन्छ, र विपदामा परेकाहरूको सहयोग गर्नुहुन्छ " । अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई साथ लिएर

आफ्नो काका वरका बिन नौफलकहाँ गइन् जुन तत्वज्ञानी थिए, अनि भनिन्: “हे काका ज्यू आफ्नो भाइको छोराको कुरा ध्यानपूर्वक सुन्नुस्” । त जब रसूल सल्लल्लाहो अलैहे वसल्लमले वरका बिन नौफललाई यस घटनाको विवरण बताए त वरका बिन नौफलले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित भनेः “यो नामूस (फरिश्ता) त त्यही हो जसलाई हजरत मूसा अलैहिस्सलाम माथि अवतरित गरिएको थियो, हाय अफशोच काश म त्यस बखत सम्म जीवित रहन्थेँ जब तिम्रो समुदाय तिमीलाई देश निकाला गर्नेछ” । त रसूल सल्लल्लाहो अलैहे वसल्लमले अचम्म मान्दै उहाँसित सोध्नु भयो किः “के मेरो समुदायका मान्छेहरू मलाई देश निकाला गर्नेछन् ?” त वरकाले भन्नु भयोः “हो यो त भएर नै रहन्छ, किनकि जुन मानिसले पनि तिमी जस्तै कुरा लिएर आयो त्यसलाई देश निकाला अवश्य गरियो । र वरकाले भनेः यदि म त्यस समयसमम जीवित रहें भने म तिम्रो बेस्सरी पूर्ण शक्तिको साथ सहायता गर्नेछु” । तर वरका बिन नौफलको यस घटनाको केही समय पश्चात निधन भयो ।

र पवित्र कुरआन मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि एकै चोटि अवतरित गरिएन जस्तोकि अरु सन्देष्टाहरू माथि गरिएको थियो, बरु २३ वर्षमा निरंतरताको साथ उहाँ सल्लल्लाहो अलैहे वसल्लममाथि चरणवद्ध तरिकाले थोका थोका अवतरित गरियो । कहिलेकाहिँ एउटा पूर्ण सूरः अवतरित गरिन्थ्यो, त कहिलेकाहिँ केही श्लोकहरू मात्र, र यसै तरिकाले पूर्ण कुरआन उहाँमाथि अवतरित गरियो ।

र पवित्र कुरआनलाई क्रमशः चरणवद्ध तरिकाले अवतरित गर्नुको तात्पर्य यो हो कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको हृदयलाई सशक्त र सुदृढ गरियोस्, र हजरत जिब्रीललाई वह्यको साथ बारम्बार पठाई उहाँको प्रोत्साहन गरियोस् ताकि यो उहाँलाई काफिर (अनास्थावान)हरूको मुकाबिलामा सशक्त बनोओस् जुन मानिसले पहिलो पटक अवतरित भएको वह्यको नै विरोध गर्नथालेका थिए ।* अल्लाहको फर्मान छ :

﴿وَقَالَ الَّذِينَ كَفَرُوا لَوْلَا نُزِّلَ عَلَيْهِ الْقُرْآنُ جُمْلَةً وَاحِدَةً ۚ كَذَٰلِكَ لِنُثَبِّتَ بِهِ فُؤَادَكَ ۖ وَرَتَّلْنَاهُ تَرْتِيلًا﴾

[الفرقان: ٣٢]

अथः र जुन मानिसहरूले इन्कार गरे, उनीहरूको भनाई छ, कि उसमाथि सम्पूर्ण कुरआन एकैपटक किन अवतरित गरिएन ? यसकारण हामीले (अलि-अलि उतार्‍यौं) ताकि यस द्वारा तिम्रो हृदयलाई दृढ राखौं र हामीले यसलाई रुकी-रुकी नै पढेर सुनाएका हौं । (सूरतुल् फुरकान ३२)

जस्तो कि कुरआनलाई चरणवद्ध तरिकाले अवतरित गर्नुको यो पनि यद्देश्य थियो कि आस्थावानहरू सरलताको साथ चरणवद्ध तरिकाले धर्म र विधानको शिक्षा ग्रहण गरुन्, र त्यसलाई सरलताको साथ बुझ्नुन्, र त्यस अनास्था र बहुदेववाद एवं अज्ञानताको अन्धकार जसमा उनीहरू लिप्त थिए त्यसबाट निस्केर ज्ञानको मार्ग र प्रकाशतिर प्रवृत्त होउन् ।

### ३- पवित्र कुरआनलाई जम्मा गरिने क्रम

कुनै पनि कुरा र श्लोक एवं मन्त्रलाई सुरक्षित राख्नुको माध्यमहरू मध्ये एउटा माध्यम हो त्यसलाई लेखिहाल्नु । र जुन कुरा लेखिदैन त्यसमा बिर्सिने सम्भावना बाँकी नै रहन्छ । त जब पवित्र कुरआन प्रलय सम्मको लागि समस्त ब्रह्माण्डको लागि मार्गदर्शन हो त यसको लागि यो अनिवार्य थियो कि यसलाई लेखियोस् ताकि यो पूर्णतः सुरक्षित भइजाओस् ।

र यसलाई लेख्ने प्रबन्ध स्वयम् रसूल सल्लल्लाहो अलैहे वसल्लमले पूर्णतया गर्नु भएको थियो, यसर्थ उहाँले आफ्ना केही ती साथीहरूलाई जुन लेख्न जान्दथे तिनीहरूलाई यो आदेश दिनु भएको थियो कि यस कुरआनलाई लेख्दै रहुन्, र उनीहरूलाई वह्यको लेखक नियुक्त

---

* -हेर्नुस्: तफ्सीर तबरी १९/१०, र अल् मुर्शिदुल् वजीज ले अबी शामा अल् मकदसी पे. २८ ।

गरिबक्सनु भएको थियो । ती सबैहरू मध्ये जैद बिन साबित अल् अन्सारी अति प्रसिद्ध छन् ।[*]

र जब जब रसूल सल्लल्लाहो अलैहे वसल्लममाथि कुनै आयत अवतरित हुन्थ्यो त पहिला आफू त्यसलाई कण्ठ गर्थे, अनि वह्य लेख्नेहरू सित भन्थे कि यसलाई लेखिहाल र भन्थे: " यस श्लोकलाई फलानो सूरतमा फलानो आयत जसमा यस्तो यस्तो वर्णन छ त्यहाँ लेख "[*] । त रसूल सल्लल्लाहो अलैहे वसल्लम उनीहरूलाई सूरतको नाम बताउँथे र भन्थे कि यसलाई त्यहाँ लेख, फेरि सहाबालाई (उहाँका साथीहरू) यो आदेश गर्थे कि जे पनि कुरआनबाट अवतरित भएछ त्यसलाई सिकुन् र त्यसलाई कण्ठ गरुन् । अनि समस्त कुरआन उहाँ सल्लल्लाहो अलैहे वसल्लमको जीवनकालमा नै रेकाअ्मा लेखियो ।[*]

रेकाअ्: यसको अर्थ हो त्यस युगका ती समाग्रीहरू जसमा लेखिन्थ्यो जसरी खुजुरको पात, छाला, एउटा विशेष प्रकारको लेखिने कपडा... आदि ।

र जिब्रील अलैहिस्सलाम प्रत्येक वर्ष पूर्ण कुरआन एक पटक रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई पाठन गराउँथे, र जुन वर्ष रसूल सल्लल्लाहो अलैहे वसल्लमको स्वर्गबास भएको थियो त्यस वर्ष उहाँलाई जिब्रीलले त्यस्तै क्रमांकन् सहीत दुईपटक पाठ गराएका थिए जुन क्रमांकन्मा कुरआन आज मुसलमानहरूको पासमा छ । अल्लाहको यो भनाई सिद्ध गर्नुको निम्ति

﴿إِنَّ عَلَيْنَا جَمْعَهُ وَقُرْآنَهُ * فَإِذَا قَرَأْنَاهُ فَاتَّبِعْ قُرْآنَهُ﴾ [القيامة: ١٧-١٨]

अर्थ: त्यसलाई एकत्रित गर्नु र उसलाई पठनीय बनाउनु हाम्रो जिम्मा छ। अत: जब हामीले त्यसलाई पढ्छौं तब तपाईले त्यस पढाईको अनुशरण गर्नुस् । (सूरतुल् कियाम: १७,१८)

﴿سَنُقْرِئُكَ فَلَا تَنسَىٰ﴾ [الأعلى: ٦]

अर्थ: हामीले तिमीलाई पढाइदिनेछौं, अनि तिमीले बिर्सने छैनौ । (सूरतल् अअ्ला ६)

## ४-पवित्र कुरआनलाई मुस्हफ (ग्रन्थ)मा जम्मा (संग्रहित) गर्नुको वर्णन

रसूल सल्लल्लाहो अलैहे वसल्लमको स्वर्गबास पश्चात उहाँको मार्गदर्शित सदाचारी उत्तराधिकारी अबूबक्र सिद्दीक रजिअल्लाहो अन्होले समस्त कुरआनका आयतहरूलाई एउटै ठाउँमा संग्रह गर्ने आदेश गर्नुभयो ताकि कुरआनको कुनै श्लोक नहराओस् त्यसलाई कण्ठ गरेका मान्छेहरूको मृत्यु भए पश्चात वा त्यस वस्तुको अन्त्य भए पश्चात जसमा ती श्लोकहरू लेखिएका छन् । अनि यस शुभ कार्यको लागि जैद बिन साबित अन्सारीलाई नियुक्त गरी उहाँलाई यो आदेश दिनु भयो कि समस्त श्लोकहरूको खोजबिन जाँचपडताल गरे पश्चात यदि त्यो लेखिएको र कण्ठ गरिएको दुवैको अनुकूल छ भने त्यसलाई यसमा लेख्नु होला ।

अनि यो शुभ कार्य समाप्त भए पश्चात यस संग्रहित ग्रन्थलाई हजरत अबू बक्रको घरमा राख्यिो, यहाँसम्म कि हजरत अबूबक्रको निधन भयो, अनि यो मुस्हफ (ग्रन्थ) दोस्रो खलीफा (उत्तराधिकारी) उमर बिन खत्ताब रजिअल्लाहो अन्होको घरमा सुरक्षित राखियो । र उहाँको निधन पश्चात यस ग्रन्थलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमकी प्रिय स्वास्नी र हजरत उमरकी छोरी उम्मुल् मूमिनीन् हजरत हफसा रजिअल्लाहो अन्हा आफूसित सुरक्षित राखिन् ।[*]

---

* - तफसीर तबरी १/२८

* - सुनने अबी दाऊद हदीस नं. ७८६, सुनने तिर्मिजी हदीस नं.३०८६, र हाकिमले मुस्तदरकमा यसलाई हदीस नं. ३३२५ मा वर्णन गर्नु भएको छ, र भन्नु भएको छ कि यो हदीस बुखारी र मुस्लिमको शर्त बमोजिम सही छ ।

* -बुखारी हदीस नं. ४५९२,४५९३ ।

* -सहीह बुखारी हदीस नं. ४९८६, सुनने तिर्मिजी हदीस नं. ३१०३, मुस्नद अहमद हदीस नं. ७६ ।

र जब इस्लाम विश्वका धेरै भूभागमा फैलियो र यसको प्रकाशले चारैतिर प्रकाशित गऱ्यो त मुसलमानहरूलाई धेरै मुसहफहरूको आवश्यकता पऱ्यो, जसबाट उनीहरू पढुन् र अध्ययन गरुन्, त केही सहाबाहरूले हजरत उसमान रजिअल्लाहो अन्होसित यसबारे कुरा गरे र समस्त मुसलमानहरूलाई एउटै इमामको मुसहफमाथि सहमत गरेर उसैको केराअत (पाठन शैली)मा जम्मा गर्ने आग्रह गरे ।

अनि हजरत उसमानले यस कार्यलाई समपन्न गर्नुको लागि एउटा विशेष समूहलाई जुन कुरआनलाई कण्ठ गरेको थियो र जसको अगुवा (नायक) जैद बिन साबित अल् अनसारीलाई बनाइयो अनि यस समूहलाई यस कार्यको लागि नियुक्त गरियो । र यस समूहको नायक जैद बिन साबितलाई बनाउने कारण यो नै थियो कि उनी नै त्यो व्यक्ति थिए जसले हजरत अबूबक्रको शासनकालमा यस कुरआनलाई एउटै ग्रन्थमा एकत्रित गरेका थिए । अनि यस कार्यको आरम्भ भयो र जति पनि मुसहफहरू विभिन्न पाठनशैलीमा थिए तयसलाई मात्र एउटै पाठनशैलीमा गरी एउटा मुसहफ तयार पारियो । तत् पश्चात त्यसै नवीनतम् मुसहफबाट अरु मुसहफ (प्रतिलिपि) तयार पारी प्रत्येक नगरतिर यो आदेशको साथ पठाइयो कि यसैबाट अरु मुसहफ तयार गरियोस् । त आज पूर्ण विश्वमा जुन पनि मुसहफ (कुरआनको ग्रन्थ) प्रयाप्त छ चाहे त्यो हातले लिखित संकलन होस् वा प्रिन्टिङ्ग प्रेसहरू द्वारा छापिएको होस् सबै यिनै मुसहफबाट लेखिए वा छापिएका हुन् जसलाई समस्त नगरहरूतिर पठाइएको थियो, र यसमा रत्ती बराबरको पनि फर्क छैन नत सूरतहरूको क्रमांकन्मा नत शब्द एवं श्लोकहरूको क्रमांकनमा ।

र यो छापाखाना “ मुजम्मउल् मलिक फहद ” पवित्र कुरआनको प्रकाशन केन्द्र जुनकि मदीना अल् मुनव्वरामा स्थित छ, र जुन तपाईहरू समक्ष यो संकलनलाई पुऱ्याउने सौभाग्य पाएछ, त्यो मात्र त्यसै शुभ कार्यलाई निरंतरता दिइरहेछ जुन पहिलादेखि नै चलिआएको छ, र यहाँ सउदी अरबका हाकिमहरूको जुन चासो र सदभाव यस पवित्र कुरआन प्रति छ कि यसलाई स्वच्छ र सर्वोत्तम तरिकाले छपाई गरेर समस्त मुसलमानहरू सम्म पुऱ्याइयोस् त्यसैलाई हामी पूर्ण र कार्यन्वयन गर्नुको लागि कार्यरत छौं ।

### ५-पवित्र ग्रनथ कुरआनको क्रमांकन र खण्डहरूको वर्णन

पवित्र कुरआनको आरम्भ सूरतुल् फतिहाबाट हुन्छ र अन्त सूरतुन् नासबाट, र पूर्ण कुरआनमा जम्मा ११४ सूरतहरू छन् र यी समस्त सूरतहरूको क्रमांकन (तरतीब) रसूल सल्लल्लाहो अलैहे वसल्लम द्वारा नै गरिएको हो, यो कुनै आर्को मान्छेले गरेको कार्य होइन । र यसको क्रमांकन् यसको अवतरणको क्रमलाई पनि हेरेर गरिएको होइन किनकि पहिलो सूरत जुन अवतरण भएको थियो त्यो सूरतुल् अलक हो तर कुरआनको क्रमांकन् अनुसार त्यो कुरआनको ९६ नम्बरको सूरत हो । त यसबाट यो स्पष्ट हुन्छ कि यसको क्रमांकनमा अवतरणको क्रमलाई आधार बनाइएको छैन बरु सहाबाहरूले कुरआनका श्लोक र सूरतहरूको क्रमांकन रसूल सल्लल्लाहो अलैहे वसल्लमको पाठनबाट नै थाहा पाएका हुन् ।

र आज यो पवित्र कुरआन ३० खण्ड (भाग) मा विभाजित गरिएको छ, र प्रत्येक भाग २ हिज्बमा विभाजित छन्, र प्रत्येक हिज्बलाई चार चौथाई (रुबुअ्) मा विभाजित गरिएको छ, तर यो भाग र हिज्बहरूको विभाजनहरू मध्ये अधिकतम उलमाहरू (विद्वानहरू)को आफ्नो तर्फबाट गरिएको कार्य हो मात्र कुरआनको पाठनलाई सबैको लागि सजिलो र सरल बनाउनुको उद्देश्यले यसलाई गरेका हुन् ।

### ६-पवित्र कुरआनको पाठन् एवं तालिमको वर्णन

मुसलमानहरूले पवित्र कुरआनको सिक्षा, पाठ र त्यसको तालिमलाई अति महत्व दिएका छन्, र त्यसको पाठन र कण्ठ गर्नुलाई आफ्नो लागि गौरवको कार्य ठान्दछन्, र यसको पाठनको त्यस्तै आयोजना गर्छन् जस्तो कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि अवतरित भएको थियो र उहाँले गरेका थिए, र सके सम्म त्यस्तै यसको पाठ गर्ने प्रयत्न गर्छन् जस्तोकि

रसूल सल्लल्लाहो अलैहे वसल्लमले सहाबालाई सिकाएका थिए, अनि सहाबाहरूले त्यसलाई कण्ठ गरी ताबईनहरूलाई सिकाएका थिए । र प्रत्येक आयतको उस्तै व्याख्या गरेका थिए जसरी रसूल सल्लल्लाहो अलैहे वसल्लमले उनीहरूलाई सिकाएका थिए ताकि ताबईनहरू प्रत्येक श्लोकको अर्थ र व्याख्या बुझेर त्यस बमोजिम कार्यरत पनि होउन् । तत्पश्चात ताबईहरू मध्ये (हाफिज) कुरआनलाई कण्ठ गरेकाहरूले कुरआनको पाठन केन्द्रहरू (विद्यालयहरू) स्थापना गरे ताकि अरुलाई कुरआनको त्यो तालिम देउन् जुन उनीहरूले सहाबाहरूबाट प्राप्त गरेका थिए । जसरी पाठ गर्ने तरिका र पाठनशैलीहरू, शब्दहरू उच्चारण गर्ने तरिका, त्यसका श्लोकहरू शब्दहरू र सूरतहरूको क्रमांकन, कुरआनलाई पाठन् गर्ने विधि (तज्वीद) ... आदि । त यसले गर्दा त्यसै समयदेखि कुरआनलाई कण्ठ गर्नेहरूले र त्यसको सिक्षा प्राप्त गर्नेहरूले अआफ्ना गुरुहरूबाट अरबी भाषामा त्यस्तै सिकेका हुन् जसरी यस कुरआनको अवतरण रसूल सल्लल्लाहो अलैहे वसल्लममाथि भएको थियो, र यो क्रम आज सम्म मुसलमानहरू बीच प्रगतिशील छ ।

र पवित्र कुरआनको पाठ अनेकौं किराअत (पाठनशैली) द्वारा गरिन्छ र यसको अर्थ हो "कुरआनका शब्दहरूको र अक्षरहरूको उच्चारण गर्ने शैली" जसलाई ताबईनहरूले सहाबाहरूबाट सिकेका थिए, र सहाबाहरूले रसूल सल्लल्लाहो अलैहे वसल्लमबाट सिकेका थिए । र त्यो सबै पाठनशैलीलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमले सही ठहर गरेका थिए । यी पाठन शैलीहरू मध्ये वर्तमान कालमा सर्वप्रसिद्ध आसिमको पाठनशैली हो जसलाई उहाँको शिष्य हफ्स बिन सुलैमानले वर्णन गरेका छन् (रिवायत गरेछन्) । र आर्को नाफेअ्को पाठनशैली हो जसलाई उहाँको शिष्य उसमान बिन सईदले (जिनको उपाधि वरश हो) वर्णन गरेका छन् । र दुवरीको पाठनशैलीलाई अमर अल् बसरीले वर्णन गरेका छन्, यस्तै कालूनको पाठनशैलीलाई नाफेअ्ले वर्णन गरेका छन् ।

## ७- कुरआनको व्याख्याको वर्णन

कुरआनको तफसीर (व्याख्या) को अर्थ होः त्यसको अर्थलाई सके सम्म प्रष्ट पार्नु ।*

र यो कार्य तब सम्म सम्पन्न हुन्सक्दैन जब सम्म कुरआनका शब्द र वाक्यहरूमा चिन्तन् मन्न नगरियोस्, र यसकुरामा अल्लाहले प्रोत्साहित गर्दै भन्नुहुन्छ :

अर्थः (यो) धेरै अनुग्रहयुक्त किताब हो, जुन हामीले तपाईंमाथि अवतरित गरेका छौं । ताकि मानिसहरूले यसका आयतहरूमा सोचविचार गरुन् र बुद्धिवालाहरूले यसबाट शिक्षा ग्रहण गरुन् । (सूरतु साद २९)

र रसूल सल्लल्लाहो अलैहे वसल्लमले त्यो सबै कुरालाई प्रष्ट पार्नु हुन्थ्यो जुन सहाबाहरूलाई बुझ्नुमा दिक्क वा गाह्रो हुन्थ्यो, वा जसको अर्थ बुझ्नुमा उनीलाई कुनै शंका सन्देह हुन्थ्यो । * तर सहाबाहरूको अरबी भाषामा दक्षता र निपुणताले गर्दा कुरआनको अर्थ र व्याख्याबारे धेरै प्रश्न गर्ने अवश्यकता परेन, तर पछि आएर मान्छेहरूलाई व्याख्याको आवश्यकता देखा पऱ्यो ।

अनि तफ्सीरका यस्ता पुस्तकहरू तयार पारियो जसमा ती सबै कुराहरूलाई संग्रह गरियो जुन रसूल सल्लल्लाहो अलैहे वसल्लम र उनका साथी एवं ताबईनहरूले कुरआनको व्याख्याको बारेमा भनेका थिए, र यो कुरआनको व्याख्याको मूलकेन्द्रिक र नाभिक ठहर भयो । र यसलाई तफ्सीरुल् मासूरको नामले सम्बोधन गरियो, जुनकि कुरआनको व्याख्यालाई बुझ्ने विशेष माध्यम मानियो किनकि यो कुरआनको त्यो व्याखयानलाई प्रस्तुत गर्छ जुन यस उम्मतको पहिलो पीढीले बुझेर वर्णन गरेका छन्, त्यो पीढी जुन अरबी भाषामा निपुण थियो र कुरआन

---

* - हेर्नुस् अल् बुरहान लिज्जरकशी १/१३ ।

* -हेर्नुस् तफ्सीर तबरी १/३७, र मुकद्दमा फित्तफ्सीर लेइब्ने तैमीया पे.३५ ।

अवतरित हुने समयको समस्त स्थिति र घटनालाई साक्षात हेरेको थियो ।

**(क) तफ्सीर (व्याख्यान) का किसमिहरू**

तफ्सीरका विद्वानहरूले पवित्र कुरआनको व्याख्या गर्ने क्रममा विभिन्न व्याख्यानशैली अपनाए, यसलेगर्दा पवित्र कुरआनको व्याख्या अनेकौं वैज्ञानिक क्षेत्रमा गरियो परिणाम स्वरूप कुरआनका व्याख्यानका अनेकौ थरि र किसिमहरू सुदर्शित भए जसरी पवित्र कुरआनको व्याख्या शाब्दिक अर्थलाई दर्शाउने हेतु, र यस्ता तफ्सीर पनि जाहेर भए जुन विधिशास्त्र सम्बन्धी छन्, त कतिपयले ऐतिहासिक तौरले यसको विश्लेषण गरे, त कतिपयले मानसिक तथ्यलाई आफ्नो केन्द्रविन्दु बनाए, त कतिपयले कुरआनका व्यवहारिक तथ्यलाई प्रष्ट पार्ने प्रयास गरे, त कतिपयले वैज्ञानिक तथ्यलाई दर्शाउन खोजे । यसले गर्दा विद्वानहरूले कुरआनका व्याख्याहरूलाई दुई मुख्य थरिमा विभाजित गरे ।

१- **तफ्सीर बिल् मासूरः** अर्थात यस तफ्सीरमा मात्र त्यो कुराहरू वर्णन गरियोस् जुन रसूल सल्लल्लाहो अलैहे वसल्लम र सहाबाहरू एवं ताबईनहरूबाट वर्णन गरिएको होस् ।

२- **तफ्सीर बिर्रायः** अर्थात यस्ता तफसीरहरू जसमा विद्वानले आफ्नो विद्याको क्षमतानुसार सोचविचार गरी साइन्टिफिक रूपले व्याख्या गरोस् जसको जग सही र मान्य विज्ञानमा आधारित होस् ।

**(ख) व्याख्या गर्ने सबैभन्दा राम्रो र सर्वोत्तम तरिका**

सर्वोत्तम तफ्सीर त्यसलाई मानिन्छ जसमा रसूल सल्लल्लाहो अलैहे वसल्लम र उहाँका साथीहरू र ताबईहरू र उहाँका शिष्यहरूको कथनलाई मात्र वर्णन गरियोस् यसैलाई अरबी भाषामा तफ्सीर बिल् मासूर भनिन्छ । किनकि उपरोक्तमा वर्णन गरिएका महानपुरुषहरू नै पवित्र कुरआनका सर्वश्रेष्ठ ज्ञाता हुन् । तर यदि कुनै तफ्सीरशास्त्रको विद्वान तफ्सीर बिल् मासूर भन्दा अधिक व्याख्या गर्न चाहन्छ अथवा कुनै अरु तरिकाले त्यसको अर्थलाई स्पष्ट पार्ने प्रयास गर्न चाहन्छ त त्यसमाथि निम्नका विधिहरूको अनुपालन गर्नु अनिवार्य भइहाल्छ ।

१- त्यसको व्याख्या यस्तो हुनुपर्छ जुन तफ्सीर बिल् मासूर अनुकूल होस्, र यस्तो कुनै कुरो र अर्थ नदर्शाओस् जुन तफ्सीर बिल् मासूर विरुद्ध होस् ।

२- त्यसले गरेको व्याख्या समस्त कुरआन र हदीसको सामान्य अर्थ र उद्देश्य विरुद्ध नहोस्, बरु त्यस अनुकूल होस् । तसर्थ कुनै पनि विद्वानलाई यो जायज छैन कि यस्तो व्याख्या गरोस् जुन कुरआन र हदीस विरोधी होस्, किनकि कुरआनका श्लोकहरू स्वयम् एकआर्काको अर्थलाई स्पष्ट पार्छन्, र एक श्लोक आर्को श्लोकको कदापि विरोधी र प्रतिकूल हुँदैन । र बाँकी रह्यो हदीसको कुरो त हदीसहरू नै कुरआनका ती सबै कुराहरूको वास्तविकता जाहेर गर्छन् जुन हाम्रो समझमा आउँदैन, र जुन कुराहरू रहस्यमय अथवा समग्रमा वर्णन गरिएका छन् त्यसको विस्तृत व्याख्या गर्छन् ।

३- पवित्र कुरआनलाई व्याख्या गर्ने विद्वानलाई यो अनिवार्य छ कि त्यो अरबी भाषामा निपुण होस्, त्यसका नियमकानून विधि एवं व्याकरणको विद् होस्, र त्यसका समस्त शब्दहरूको साइन्टिफिक प्रयोग र त्यसको अर्थको ज्ञानी होस् । किनकि कुरआन अरबी भाषामा अवतरित भएको छ त त्यसको व्याख्या गर्नुको लागि उपरोक्तमा वर्णन गरिएका नियमकानूनको ज्ञाता भए पश्चात नै त्यसको व्याख्या गर्नु योग्यता प्राप्त हुन्छ, र बिना यसको ज्ञान गरी व्याख्या गर्नु मिल्दैन ।

४- विद्वान अस्पष्ट अथवा रहस्यमय श्लोकहरूको व्याख्यागर्दा स्पष्ट आयतहरूको सहायता लेओस्, किनकि कुरआनको एउटा भाग आर्को भागको व्याख्या र विश्लेषण गर्छ, र कुरआनका अधिकतम आयतहरू स्पष्ट छन् तिनका अर्थ बिलकुलै स्पष्ट छन्, तर केही आयतहरू यस्ता

पनि छन् जसको अर्थ बुझ्नुमा केही मान्छेहरूलाई दिक्क हुन्सक्छ, त यस्ता आयतहरूलाई बुझ्नुमा स्पष्ट आयतहरू सहायता गर्छन् र त्यस आयतको स्पष्टिकरण गर्छन् र त्यसको उद्देश्यलाई सुदर्शित गर्छन् । जस्तोकि अल्लाहको फर्मान छ :

﴿هُوَ الَّذِيٓ أَنزَلَ عَلَيۡكَ ٱلۡكِتَٰبَ مِنۡهُ ءَايَٰتٞ مُّحۡكَمَٰتٌ هُنَّ أُمُّ ٱلۡكِتَٰبِ وَأُخَرُ مُتَشَٰبِهَٰتٞۖ فَأَمَّا ٱلَّذِينَ فِي قُلُوبِهِمۡ زَيۡغٞ فَيَتَّبِعُونَ مَا تَشَٰبَهَ مِنۡهُ ٱبۡتِغَآءَ ٱلۡفِتۡنَةِ وَٱبۡتِغَآءَ تَأۡوِيلِهِۦۖ وَمَا يَعۡلَمُ تَأۡوِيلَهُۥٓ إِلَّا ٱللَّهُۗ وَٱلرَّٰسِخُونَ فِي ٱلۡعِلۡمِ يَقُولُونَ ءَامَنَّا بِهِۦ كُلّٞ مِّنۡ عِندِ رَبِّنَاۗ وَمَا يَذَّكَّرُ إِلَّآ أُوْلُواْ ٱلۡأَلۡبَٰبِ﴾ [آل عمران: ٧]

अर्थः अल्लाहले नै तिमीलाई किताब प्रदान गर्‍यो, जसका केही आधारभूत आयात छन्, त्यही वास्तविक किताब हो र केही सामान्य प्रकृतिका छन् । अनि जसको हृदयमा कुटिलता हुन्छ तिनले फसाद गर्ने मनसाय र गलत व्याख्याको नियतले यिनै सामान्य (रहस्यमय) आयातका पछाडि लागि पर्दछन् । तर यसको वास्तविक अर्थ अल्लाह बाहेक अरु कसैलाई थाहा छैन । जुन मानिसहरू ठोस र गहिरो ज्ञान राख्दछन्, तिनीहरू भन्दछन् कि हामीले उनीमाथि आस्था राखिसकेका छौं । यी सबै हाम्रा पालनकर्ताबाट हुन्, नसीहत त बुझ्नेले मात्र ग्रहण गर्दछन् । (सूरतु आले इम्रान ७)

५- सत्य र प्रमाणित भएका वैज्ञानिक तथ्य एवं विश्लेषणलाई पनि यस्ता आयतहरूको पुष्टिकरण गर्नुको निम्ति वर्णन गर्न सकिन्छ जुन आयतहरू ब्रह्माण्डका रहस्यमय तथ्यहरूमा प्रकाश पार्छन्, तर वैज्ञानिक तथ्यलाई नै आधार मानी अथवा त्यसमा निर्भर भई कुरआनको व्याख्या गर्नु अनुचित र अमान्य छ, किनकि यस्तो गर्नाले कुरआनको व्याख्यामा त्यो अर्थ पनि शम्मिलित हुन्सक्छ जुन कुरआनले दर्शाउँदैन अथवा दर्शाउन खोजेको छैन ।

६- अमान्य र अमानवीय एवं घृणित व्याखयाबाट टाढा रहनु, जुनकि यस्ता अर्थ दर्शाउँछन् जुन इस्लामीय विधिशास्त्र विरुद्ध छन्, र अरबी भाषाको नियम र व्याकरण विरोधी पनि, अब चाहे यसो गर्ने मान्छेको उद्देश्य कुरआनको अर्थ र व्याखयामा विकृति उत्पन्न गर्नु होस् वा अरबी भाषाको नियम कानून र व्याकरणको अनभिज्ञताको कारण वा त्यस अर्थको बारेमा शंकामा परेको कारणले होस् किनकि अमानवीय र विकृति उत्पनन गर्ने अर्थहरूबाट यो कुरआन पवित्र छ उच्च छ ।

**८- पवित्र कुरआनको विचित्रता र चमत्कारको वर्णन**

एअ्जाज अर्थात चमत्कारको अर्थ होः यस्तो कुराहरूको प्रदर्शन जुन मनुष्यको क्षमता र शक्ति, पहुँच एवं वशबाट बाहिर होस्, जसलाई मान्छेले गर्नु असम्भव होस् । र चमत्कारहरू अल्लाहले आफ्ना सन्देष्टाहरूको सत्यतालाई प्रमाणित गर्नुको निम्ति र उनीहरूको लागि तर्क र निशानीको रूपमा प्रस्तुत गरेका छन्, जसलाई सृष्टि मध्ये कोही पनि प्रकट गर्न सक्दैन, र कुरआनमा यसलाई **आयत** र **बुरहान**को नामले सम्बोधन गरिएको छ ।

र पवित्र कुरआन अल्लाहको साक्षात वाणी हो यसलेगर्दा यसका अर्थहरू परिपूर्ण छन्, र यसको भाषाशैली र शब्दको चुनाव एवं वाक्यको रचना एवं प्रयोग यति मनमोहक र सुन्दर छन् कि कोही मनुष्य पनि यस जस्तो उच्चकोटिको वाणीको रचना गर्नुमा सूक्ष्म छैन, बरु जेगरे पनि यसजस्तो वाणी ल्याउनुमा असमर्थ नै रहनेछ । अल्लाहको फर्मान छ :

﴿الٓرۚ كِتَٰبٌ أُحۡكِمَتۡ ءَايَٰتُهُۥ ثُمَّ فُصِّلَتۡ مِن لَّدُنۡ حَكِيمٍ خَبِيرٍ﴾ [هود: ١]

अर्थः अलिफ. लाम. रा. । यो यस्तो किताब हो जसको आयतहरू ठोस छन् र बुद्धिमत्ता सम्पन्न सबै कुराको ज्ञाताको तर्फबाट स्पष्टसंग व्याख्या गरिएको छ । (सूरतु हूद १)

र कतिपय बहुदववादी र काफिरहरूले पवित्र कुरआनको बारेमा सन्देहजनक कुराहरू गरे र यो सिद्ध गर्ने प्रयास पनि गरे कि यो कुरआन अल्लाहको वाणी होइन, र आफ्ना मिथ्या

कुराहरूद्वारा मान्छेहरूलाई यस कुरआनमाथि आस्था ल्याउनुबाट रोक्ने प्रयत्न पनि गरे, तर जब अल्लाहले सबैलाई यसै कुरआन झैं उच्चकोटिको वाणी बनाएर ल्याउने हाँक र चुनौती दियो त सबै यस्तो गर्नुबाट असमर्थ भए, र यो भन्नुमा विवश भए कि यद्यपि यो कुरआन स्पष्ट अरबी भाषामा छ तर यस जस्तो उच्चकोटिको वाणी रचेर ल्याउनु असम्भव छ । अल्लाहको फर्मान छ

﴿ أَمْ يَقُولُونَ افْتَرَاهُ قُلْ فَأْتُوا بِسُورَةٍ مِّثْلِهِ وَادْعُوا مَنِ اسْتَطَعْتُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴾

[يونس: ٣٨]

अर्थः के यिनीहरूले यो भन्दछन्: पैगम्बरले त्यसलाई आफ्नो तर्फबाट रचेका हुन् । भनिदिनुस् कि यदि साँचो हौ भने तिमीले पनि यस्तै प्रकारको एक सूरः बनाएर ल्याऊ र अल्लाह बाहेक जसलाई तिमी बोलाउन सक्छौ बोलाइहाल यदि तिमी साँचो छौ । (सूरतु यूनुस ३८)

र कुरआनले बलपूर्वक यो आव्हान गऱ्यो कि यदि समस्त मानव र दानवजाति एवं समस्त सृष्टि मिलेर एकआर्काको सहायक भएर यस कुरआन जस्तो उच्चकोटिको वाणी ल्याउने जति पनि प्रयास गरे पनि ल्याउन सक्दैनन् । जस्तोकि अल्लाहको फर्मान छ :

﴿ قُل لَّئِنِ اجْتَمَعَتِ الْإِنسُ وَالْجِنُّ عَلَىٰ أَن يَأْتُوا بِمِثْلِ هَٰذَا الْقُرْآنِ لَا يَأْتُونَ بِمِثْلِهِ وَلَوْ كَانَ بَعْضُهُمْ لِبَعْضٍ ظَهِيرًا ﴾

[بني إسرائيل: ٨٨]

अर्थः भनिदिनुस् कि यदि सबै मानिसहरू र सबै जिन्नहरू मिलेर यस कुरआन जस्तो ल्याउन चाहे पनि यस कुरआन जस्तो बनाई ल्याउन असम्भव छ। यद्यपि तिनीहरू एक अर्काको मद्दतगार किन नबनुन् । (सूरतुल् इस्रा ८८)

र पवित्र कुरआन चमत्कारी छ किनकि त्यो अल्लाहको वाणी हो जसको समानता सृष्टिहरूको वाणी कदापि गर्नसक्दैन । र त्यो चमत्कारी छ आफ्नो विशेष भाषाशैलीमा, वाक्यको रचना र शब्दको चुनाव र प्रयोगमा, र मनमोहक स्पष्टिकरण गर्नुमा, र सत्य कथा र वृतान्त एवं खबरको पुष्टिकरण एवं विवरण गर्नुमा, र जति पनि त्यसमा निर्देशनहरू छन् र जति पनि विधिशास्त्रको वर्णन छ अथवा जति पनि मानोवैज्ञानिक, भावनात्मक प्रभावशक्ति छन् वा जति पनि स्पष्ट वैज्ञानिक तथ्यहरू परिपूर्ण रूपले वर्णन छन् सबैमा कुरआन विचित्र र चमत्कारी छ ।

र कतिपय ठूलठूला वैज्ञानिक र विद्वानहरूलाई चाहे ती विद्वानहरू भौतिकविद् हुन् वा खगोलविद्, चाहे चिकित्सक हुन् वा जीव एवं शारीरिकविद् ... सबैलाई कुरआनको वैज्ञानिक तथ्याङ्क र विवरणले छक्क र आश्चर्य चकित पारेको छ, किनकि कुरआनले यस ब्रह्माण्ड र विज्ञानका तथ्याङ्कनलाई जसको बारेमा यी विद्वानहरू अनुसंधान र रिसर्च गरिरहेका छन् यस्तो सटीक र परिपूर्ण तरिकाले वर्णन गरेको छ कि जस वैज्ञानिक तथ्यहरूलाई आज सम्म वैज्ञानिकहरूले आधुनिक र सूक्ष्मदर्शी यन्त्रहरूद्वारा पनि पत्ता लगाउन सकेका छैनन् त्यसलाई मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले जुनकि निरक्षर थिए बिना कुनै यन्त्र बताएका हुन् । यसलेगर्दा कतिपय वैज्ञानिकहरू त इस्लामलाई अङ्गिकार गरिसकेका छन्, किनकि ती वैज्ञानिकहरूलाई यो कुरो राम्ररी थाहा भयो कि जुन पनि विवरण हामी समक्ष कुरआनले राखेछ यो कसै मनुष्यको वाणी कदापि हुनसक्दैन, बरु निःसन्देह नै यो समस्त संसारको स्वामीको वाणी हो जुन सर्वज्ञानी छ ।

र कुरआनमा कतिपय यस्ता श्लोकहरू छन् जुन एकेश्वरवाद र त्यस एक निराकार अल्लाहको गरिमामय र मनमोहक रचना र निर्माणमाथि संकेत एवं प्रमाणीकरण गर्छन् । अल्लाहको फर्मान छ :

﴿ سَنُرِيهِمْ آيَاتِنَا فِي الْآفَاقِ وَفِي أَنفُسِهِمْ حَتَّىٰ يَتَبَيَّنَ لَهُمْ أَنَّهُ الْحَقُّ أَوَلَمْ يَكْفِ بِرَبِّكَ أَنَّهُ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴾

[حم السجدة: ٥٣]

अर्थ: शीघ्र नै हामीले उनीहरूलाई आफ्ना निशानीहरू दुनियाँमा देखाउने छौं र स्वयम् उनीहरूको आफै भित्र पनि, यहाँसम्म कि उनीहरूलाई स्पष्ट भइहाल्नेछ कि त्यो (कुरआन) सत्य छ । के तपाईको पालनाकर्ता यस दृष्टिले प्रयाप्त छैन कि त्यो हरेक कुराको जानकार छ । (सूरतु फुस्सिलत ५३)

**९- पवित्र कुरआनको अनुवाद (व्याख्या)**

जब मनुष्यले भनेको कुराहरूको अनुवाद अप्ठ्यारो हुन्छ त पवित्र कुरआनको अनुवाद गर्दाखेरि अति अप्ठ्यारो हुन्छ, किनकि यो अल्लाहको वाणी हो जुन अरबी भाषामा अवतरित भएको छ, र यसका शब्द र अर्थ दुवै अल्लाहकै तर्फबाट वह्य गरिएका हुन्, त कुनै मनुष्यको लागि यो सम्भव नै छैन कि त्यो यो दावी गरोस् कि मैले कुरआनले दर्शाउन खोजेको समस्त अर्थलाई वर्णन गरेको छु, वा यो दावी गरोस् कि मैले कुरआनको रचनाशैली झैं पुनः केही रचना गरिसकेको छु जस्तोकि त्यो अरबी भाषामा रचिएको छ ।

तर कुरआनको अनुवाद गर्नु गाह्रो भए पनि मुस्लिम विद्वानहरूको कथनानुसार हामीमाथि यो अनिवार्य छ कि पवित्र कुरआनको निमंत्रणलाई समस्त ब्रह्माण्डमा भएका सृष्टिहरू सम्म पुगाऔं, चाहे उनीहरूको भाषा जुनसुकै पनि किन नहोस् र यो कार्य बिना अनुवाद सम्पन्न हुन्सक्दैन ।*

र पवित्र कुरआनको अनुवाद विभिन्न भाषाहरूमा निम्नि प्रकारले हुनसक्छ !

१- **पवित्र कुरआनको अर्थको अनुवादः** र यो मात्र अनुवाद हुन्छ जसमा विस्तारले व्याख्या हुँदैन बरु मात्र त्यो अर्थलाई नै दर्शाउँछ जुन कुरआनका श्लोकहरू र शब्दहरूबाट प्रष्ट हुन्छ ।

२- **कुरआनको अर्थको विस्तारले व्याख्याः** यसलाई स्पष्टिकरण र उदाहरणहरू द्वारा स्पष्ट पारिन्छ, र यो पवित्र कुरआनको आर्को भाषामा व्याख्यानको वर्गामा आउँछ ।*

र कुरआनको अर्थलाई दर्शाउनको लागि अनुवाद गर्दाखेरि जति पनि जतन र परिश्रम गरेमा, र अनुवादक जति पनि दुवै भाषामा दक्ष र निपुण भए पनि त्यसले गरेको अनुवादलाई कुरआन भनिदैन, र यसका प्रमुख दुई कारणहरू छन् :*

**पहिलो कारण:** निःसंदेह पवित्र कुरआन अल्लाहको साक्षात वाणी हो र स्पष्ट अरबी भाषामा अवतरित भएको छ र त्यो विवरण र प्रावधानको चरमसीमामा विद्यमान छ तसर्थ यसका श्लोकहरूलाई कुनै आर्को भाषामा रचनाले वा लेख्नाले त्यसलाई कुरआन भन्नु मिल्दैन ।

**दोस्रो कारण:** अनुवादको अर्थ हो: अनुवादकले आफ्नो क्षमता अनुसार पवित्र कुरआनको जुन अर्थ बुझ्केको छ त्यसैको व्याख्या गर्नु तसर्थ यस दृष्टिकोणले यो कुरआनको व्याख्या (तफ्सीर) हो न कि कुरआन, त जब व्याख्यालाई कुरआन भन्न सकिदैन त अनुवादलाई पनि कुरआन भन्न सकिदैन ।

र कुरआनको अनुवाद स्वीकृत र लोकप्रिय हुनुको लागि यो आवश्यक छ कि अनुवादकको अनुवाद त्यो सबै विधिहरू अनुकूल होस् जुन विधिहरू विद्वानहरूले पवित्र कुरआनको अनुवादको सम्बन्धमा वर्णन गरेका छन् । यस कुरालाई ध्यानमा राखेर कि अनुवादक आफ्नो अनुवादको आडमा कुरआनको अर्थमा कुनै प्रकारको विकृति नफैलाओस् नत मुसलमानहरूको भावनात्मक र मानोवैज्ञानिक र पवित्र रीति एवं विधिहरूमा विकृति फैलाउने उद्देश्य राखोस्, जस्तो कि केही

---

* -दलालतुल् अल्फाज ले इब्राहीम अनीस पे. १७१-१७५, फन्नुत्तरजमा लेमुहम्मद औज मुहम्मद पे. १९, मज्मूअ् फतावा लेइब्ने तैमिया ४/११६ ।

* -मज्मूअ् फतावा लेइब्ने तैमिया ४/११५,५४२, र अत्तफसीर वल् मुफस्सिरुन लेमुहममद हुसैन अज्जहबी १/२३

* -मज्मूअ् लेशरहिल् मुहज्जब लिन्नववी ३/३४२ ।

अनास्थावान र गैर मुस्लिम स्कालरहरू र कपटीहरूले अआफ्ना अनुवादहरूमा प्रदर्शित गरेका छन्, यिनीहरूले आफ्ना हृदयमा अनास्था र कपट एवं घृणित सिद्धान्त लुकाएर राखेका छन् र त्यसैलाई कुरआनको अनुवादमा मिश्रित गरी विश्वव्यापी र सर्वमान्य धर्म इस्लामलाई र त्यसका सर्वोत्तम सिद्धान्तलाई हानि पुऱ्याउन प्रयासमा कार्यरत छन् ।

यसै कारण मुजम्मउल मलिक फहद पवित्र कुरआनको प्रसिद्ध प्रिन्टिङ्ग प्रेस जुनकि मदीना अल् मुनव्वरामा स्थित छ त्यो यस्ता अनुवादहरू प्रकाशित गर्नुमा कार्यरत छ जुन अनुवाद पूर्णरूपले सत्यमा आधारित होस्, र पूर्णरूपले परमाणित होस्, ताकि पवित्र कुरआनको त्यस उच्चकोटिको निमन्त्रण र आमन्त्रणलाई समस्त भाषाभाषीका सर्वसाधारण मान्छेहरु समम पुऱ्याउन सकोस् जसतर्फ कुरआनले सबैलाई आव्हान गरेको छ ।

र समस्त प्रशंसा अल्लाहकै लागि छन् जुन समस्त ब्रह्माण्डको पालकर्ता हो, र शान्ति अवतरित होस् हाम्रा प्रियतम् सन्देष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि र उहाँका समस्त घरपरिवार र उहाँका समस्त साथीहरू माथि, र ताबईनहरू र ती सबैहरू माथि जुन प्रलयसम्म उहाँको अनुशरण गर्ने छन् ।

# सूरतुल् फातिहाः - १




यो सूरः मक्की हो र यसमा ७ आयतहरू र १ रुकूअ् छन् ।

| | |
|---|---|
| १) शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु र अति कृपालु छ । | بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ ١ |
| २) समस्त प्रशंसा अल्लाहका लागि हुन, जो सम्पूर्ण ब्रह्माण्डको पालनकर्ता हो । | ٱلۡحَمۡدُ لِلَّهِ رَبِّ ٱلۡعَٰلَمِينَ ٢ |
| ३) अत्यन्त दयालु अति कृपालु हो । | ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ ٣ |
| ४) प्रतिफल (कयामत)को दिनका स्वामी हो । | مَٰلِكِ يَوۡمِ ٱلدِّينِ ٤ |
| ५) हामी तिम्रै उपासना गर्दछौं र तिमीसंग मात्र मद्दत चाहन्छौं । | إِيَّاكَ نَعۡبُدُ وَإِيَّاكَ نَسۡتَعِينُ ٥ |
| ६) हामीलाई सोझो (सच्चा) बाटो देखाऊ । | ٱهۡدِنَا ٱلصِّرَٰطَ ٱلۡمُسۡتَقِيمَ ٦ |
| ७) उनीहरूको बाटो जसलाई तिमीले पुरस्कृत गऱ्यौ तिनीहरूको होइन जसमाथि तिम्रो क्रोध भयो, र न पथ-भ्रष्टहरूको (बाटो) । | صِرَٰطَ ٱلَّذِينَ أَنۡعَمۡتَ عَلَيۡهِمۡ غَيۡرِ ٱلۡمَغۡضُوبِ عَلَيۡهِمۡ وَلَا ٱلضَّآلِّينَ ٧ |



## सूरतुल् बकर:-२




सूरतुल् बकर: मदनी हो, र यसमा २८६ आयतहरू र ४० रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ्-लाम्-मीम् ।

الٓمٓ ١

२) यस किताब (कुरआनलाई अल्लाहको ग्रन्थ हुनु)मा कुनै संदेह छैन । अल्लाहसंग डर मान्नेहरूका लागि मार्ग दर्शन हो ।

ذٰلِكَ الْكِتٰبُ لَا رَيْبَ فِيْهِ هُدًى لِّلْمُتَّقِيْنَ ٢

३) जो गैब (अदृश्य)मा ईमान राख्दछन र सही ढंगले नमाज पढ्दछन् र हामीले प्रदान गरेकोबाट खर्च गर्दछन् ।

الَّذِيْنَ يُؤْمِنُوْنَ بِالْغَيْبِ وَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ ٣

४) र जसले तपाईमाथि अवतरित (किताब) र तपाई भन्दा पहिलेका अवतरित (किताबहरू) माथि ईमान राख्दछन् साथै परलोकमाथि पनि विश्वास राख्दछन् ।

وَالَّذِيْنَ يُؤْمِنُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمَآ اُنْزِلَ مِنْ قَبْلِكَ وَ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ٤

५) तिनीहरू नै आफ्नो पालनकर्ताको तर्फबाट मार्गदर्शित छन्, र तिनी नै मुक्ति पाउनेहरू हुन् ।

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ وَ اُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ٥

६) काफिरहरूलाई तपाईले डर देखाउनु वा डर नदेखाउनु बराबर छ, तिनीहरूले ईमान ल्याउने छैनन् ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا سَوَآءٌ عَلَيْهِمْ ءَاَنْذَرْتَهُمْ اَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُوْنَ ٦

७) अल्लाहले तिनीहरूका हृदय र कानहरूलाई सीलबन्दी गरि दिएको

خَتَمَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَعَلٰى سَمْعِهِمْ وَعَلٰٓى اَبْصَارِهِمْ غِشَاوَةٌ وَّلَهُمْ عَذَابٌ عَظِيْمٌ ٧

छ र तिनको आँखा अगाडी पर्दा छ, र तिनको लागि ठूलो सजाय छ ।

८) केही यस्ता मानिस छन् जसले अल्लाह र आखिरतमाथि ईमान भएको कुरा गर्दछन् तर वास्तवमा उनीहरू ईमानवाला होइनन् ।

وَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ اٰمَنَّا بِاللّٰهِ وَبِالْيَوْمِ الْاٰخِرِ وَمَا هُمْ بِمُؤْمِنِيْنَ ٨

९) तिनीहरू अल्लाह र आस्थावानहरूलाई धोखा दिइरहेका छन्, तर यथार्थमा आफूलाई नै धोका दिइरहेका छन्, तर तिनीहरूले बुझ्दैनन् ।

يُخٰدِعُوْنَ اللّٰهَ وَالَّذِيْنَ اٰمَنُوْا ۚ وَمَا يَخْدَعُوْنَ اِلَّآ اَنْفُسَهُمْ وَمَا يَشْعُرُوْنَ ٩

१०) तिनीहरूको हृदयमा रोग छ, अल्लाहले तिनको रोग झन् वृद्धि गरिदियो, र तिनकै झुठको कारणले तिनीहरूलाई कष्टदायक सजाय छ ।

فِيْ قُلُوْبِهِمْ مَّرَضٌ ۙ فَزَادَهُمُ اللّٰهُ مَرَضًا ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ۢ ۙ بِمَا كَانُوْا يَكْذِبُوْنَ ١٠

११) जब तिनीहरूलाई भनिन्छ, कि पृथ्वीमा उपद्रव नगर, त भन्दछन् कि हामी त सुधार वादी हौं ।

وَاِذَا قِيْلَ لَهُمْ لَا تُفْسِدُوْا فِي الْاَرْضِ ۙ قَالُوْٓا اِنَّمَا نَحْنُ مُصْلِحُوْنَ ١١

१२) खबरदार रहनु, यिनीहरू निःसन्देह उपद्रवीहरू हुन् तर बुझ्दैनन् ।

اَلَآ اِنَّهُمْ هُمُ الْمُفْسِدُوْنَ وَلٰكِنْ لَّا يَشْعُرُوْنَ ١٢

१३) जब यिनीहरूलाई भनिन्छः कि अन्य मानिसहरूले ईमान ल्याए जस्तै तिमीहरू पनि आस्थावान बन । तब भन्दछन् के हामीले पनि ती मूर्खहरू जस्तै आस्था राखौं ? खबरदार ! यी नै मूर्ख हुन् तर यिनीहरूलाई थाहा छैन ।

وَاِذَا قِيْلَ لَهُمْ اٰمِنُوْا كَمَآ اٰمَنَ النَّاسُ قَالُوْٓا اَنُؤْمِنُ كَمَآ اٰمَنَ السُّفَهَآءُ ۭ اَلَآ اِنَّهُمْ هُمُ السُّفَهَآءُ وَلٰكِنْ لَّا يَعْلَمُوْنَ ١٣

१४) र, जब यिनीहरूको भेट, ईमान-वालाहरूसँग हुन्छ त भन्दछन्

وَاِذَا لَقُوا الَّذِيْنَ اٰمَنُوْا قَالُوْٓا اٰمَنَّا ۚ وَاِذَا خَلَوْا اِلٰى شَيٰطِيْنِهِمْ ۙ قَالُوْٓا اِنَّا مَعَكُمْ

إِنَّمَا نَحْنُ مُسْتَهْزِءُوْنَ ﴿١٤﴾

हामी पनि आस्थावान हौं र जब आफ्ना ठूला बडाहरू कहाँ पुग्दछन् त भन्दछन् कि हामी त तिम्रो साथमा छौं, हामी त उनीहरूसँग मात्र ठट्टा गर्दछौं ।

اَللّٰهُ يَسْتَهْزِئُ بِهِمْ وَيَمُدُّهُمْ فِيْ طُغْيَانِهِمْ يَعْمَهُوْنَ ﴿١٥﴾

१५) अल्लाहले पनि तिनीहरूको (कपटीहरूको) उपहास गर्दछ र तिनीहरूलाई छूट दिइराखेको हुन्छ, जसले गर्दा तिनीहरूको अट्टेरिपन र बहकावट अरु बढाई दिन्छ ।

أُولٰٓئِكَ الَّذِيْنَ اشْتَرَوُا الضَّلٰلَةَ بِالْهُدٰى فَمَا رَبِحَتْ تِّجَارَتُهُمْ وَمَا كَانُوْا مُهْتَدِيْنَ ﴿١٦﴾

१६) यी त्यस्ता मानिस हुन् जसले सत्य मार्गको सट्टा पथ-भ्रष्टतालाई किनेका छन्, यिनीहरूको व्यापारमा न केही नाफा भयो, न त उनीहरूलाई सत्यमार्गको प्राप्ति भयो ।

مَثَلُهُمْ كَمَثَلِ الَّذِي اسْتَوْقَدَ نَارًا فَلَمَّآ أَضَآءَتْ مَا حَوْلَهٗ ذَهَبَ اللّٰهُ بِنُوْرِهِمْ وَتَرَكَهُمْ فِيْ ظُلُمٰتٍ لَّا يُبْصِرُوْنَ ﴿١٧﴾

१७) यिनीहरूको उदाहरण त्यस मानिस जस्तै छ, जसले आगो बाल्यो र आगोको प्रकाश वरिपरि फैलिने बित्तिकै अल्लाहले तिनीहरूबाट प्रकाशलाई खोसिहाल्यो र तिनलाई अँध्यारोमा छाडिदियो, जसलेगर्दा तिनीहरूले केही देख्दैनन् ।

صُمٌّ بُكْمٌ عُمْيٌ فَهُمْ لَا يَرْجِعُوْنَ ﴿١٨﴾

१८) बहिरा, लाटा र अन्धा छन्, तसर्थ तिनीहरू(सत्मार्गतिर) फर्कन सक्दैनन् ।

أَوْ كَصَيِّبٍ مِّنَ السَّمَآءِ فِيْهِ ظُلُمٰتٌ وَّرَعْدٌ وَّبَرْقٌ يَجْعَلُوْنَ أَصَابِعَهُمْ فِيْٓ آذَانِهِمْ مِّنَ الصَّوَاعِقِ حَذَرَ الْمَوْتِ وَاللّٰهُ مُحِيْطٌ بِالْكٰفِرِيْنَ ﴿١٩﴾

१९) अथवा तिनीहरूको उदाहरण आकाशबाट हुने त्यो बर्षा जस्तो छ, जसमा अँध्यारो, गर्जन र चट्याङ्ग हुन्छ, बिजुली गर्जनुको

कारण मृत्युको भयले कानमा औंला हाल्दछन् । र अल्लाहले काफिरहरूलाई घेर्ने छ ।

२०) (लाग्दछ) चट्याङ्गले तिनीहरूको आँखाको (ज्योति) तुरुन्तै खोस्दै छ । जब चट्याङ्गले तिनीहरूमाथि प्रकाश छर्दछ तब तिनीहरू हिंड्डुल गर्दछन्, र जब अँध्यारो हुन्छ तब उभिरहन्छन् । र यदि अल्लाहले चाहेमा तिनीहरूका कान र आँखालाई निष्कृय गरिदिन्छ । निःसन्देह अल्लाह हरेक कुरामाथि सर्वशक्ति सम्पन्न छ ।

يَكَادُ الْبَرْقُ يَخْطَفُ أَبْصَارَهُمْ كُلَّمَا أَضَاءَ لَهُمْ مَشَوْا فِيهِ وَإِذَا أَظْلَمَ عَلَيْهِمْ قَامُوا وَلَوْ شَاءَ اللَّهُ لَذَهَبَ بِسَمْعِهِمْ وَأَبْصَارِهِمْ إِنَّ اللَّهَ عَلَى كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٠﴾

२१) हे मानिसहरू! आफ्ना पालनकर्ताको उपासना गर जसले तिमी र तिमीभन्दा पहिलाका मानिसहरूको सृष्टि गऱ्यो ताकि तिमीहरू सदाचारी बन्न सक ।

يَا أَيُّهَا النَّاسُ اعْبُدُوا رَبَّكُمُ الَّذِي خَلَقَكُمْ وَالَّذِينَ مِنْ قَبْلِكُمْ لَعَلَّكُمْ تَتَّقُونَ ﴿٢١﴾

२२) जसले तिम्रो लागि पृथ्वीलाई ओछ्यान र आकाशलाई छत बनायो र आकाशबाट वर्षा गराएर त्यस द्वारा तिम्रो आहारको निम्ति थरि-थरिका फल-फूल उत्पादन गऱ्यो । खबरदार ! जानी-जानी कसैलाई अल्लाहको साझेदार नबनाऊ ।

الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ فِرَاشًا وَالسَّمَاءَ بِنَاءً وَأَنْزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَخْرَجَ بِهِ مِنَ الثَّمَرَاتِ رِزْقًا لَكُمْ فَلَا تَجْعَلُوا لِلَّهِ أَنْدَادًا وَأَنْتُمْ تَعْلَمُونَ ﴿٢٢﴾

२३) हामीले आफ्ना सेवकमाथि जे उताऱ्यौं, त्यसमा तिमीलाई यदि शंका छ र तिमी साँचो भए त्यस्तै एउटै (सूरह) बनाएर देखाऊ, र

وَإِنْ كُنْتُمْ فِي رَيْبٍ مِمَّا نَزَّلْنَا عَلَى عَبْدِنَا فَأْتُوا بِسُورَةٍ مِنْ مِثْلِهِ وَادْعُوا شُهَدَاءَكُمْ مِنْ دُونِ اللَّهِ إِنْ كُنْتُمْ صَادِقِينَ ﴿٢٣﴾

तिमीले अल्लाह बाहेकका आफूलाई मद्दत गर्नेहरूलाई बोलाई ल्याऊ ।

२४) तर यदि तिमी गर्न सकेनौं भने र तिमी कहिल्यै पनि गर्न सक्दैनौं (तसर्थ) त्यस आगोबाट डराऊ जसको इन्धन मानिस र ढुङ्गाहरू हुन् । जुन नास्तिकहरूका लागि तयार गरिएको हो ।

فَاِنۡ لَّمۡ تَفۡعَلُوۡا وَلَنۡ تَفۡعَلُوۡا فَاتَّقُوا النَّارَ الَّتِىۡ وَقُوۡدُهَا النَّاسُ وَالۡحِجَارَةُ ۖۚ اُعِدَّتۡ لِلۡكٰفِرِيۡنَ ﴿۲۴﴾

२५) र, आस्था राख्ने र असल काम गर्ने मानिसहरूलाई स्वर्गको शुभ समाचार दिनु जसमुनि नहरहरू बगी राखेका छन् । जब तिनीहरूलाई फलको आहार दिइने छ । जब त तिनले भन्नेछन्, यी त तिनै हुन् जुन हामीलाई पहिला दिइएको थियो । ती मिल्दो जुल्दो फल हुनेछन् र त्यहाँ तिनीहरूका लागि पाक-पवित्र पत्नीहरू हुनेछिन् र तिनीहरू सधैं त्यहीं बस्नेछन् ।

وَبَشِّرِ الَّذِيۡنَ اٰمَنُوۡا وَعَمِلُوا الصّٰلِحٰتِ اَنَّ لَهُمۡ جَنّٰتٍ تَجۡرِىۡ مِنۡ تَحۡتِهَا الۡاَنۡهٰرُ ؕ كُلَّمَا رُزِقُوۡا مِنۡهَا مِنۡ ثَمَرَةٍ رِّزۡقًا ۙ قَالُوۡا هٰذَا الَّذِىۡ رُزِقۡنَا مِنۡ قَبۡلُ وَاُتُوۡا بِهٖ مُتَشَابِهًا ؕ وَلَهُمۡ فِيۡهَآ اَزۡوَاجٌ مُّطَهَّرَةٌ ۙ وَّهُمۡ فِيۡهَا خٰلِدُوۡنَ ﴿۲۵﴾

२६) नि:सन्देह अल्लाहले कुनै उदाहरणको वर्णनबाट लाज मान्दैन चाहे त्यो लामखुट्टेको होस् अथवा त्यो भन्दा सानो चीजको नै किन नहोस् । आस्थावानहरूले त यसलाई आफ्ना पालनकर्ताको तर्फबाट सम्भन्छन् र काफिरहरूले भन्दछन् कि यस उदाहरणबाट अल्लाहको के प्रयोजन छ ? यसद्वारा धेरैलाई पथ विचलित गर्दछ र अनेकौंलाई सत्यको बाटोमा

اِنَّ اللّٰهَ لَا يَسۡتَحۡىٖۤ اَنۡ يَّضۡرِبَ مَثَلًا مَّا بَعُوۡضَةً فَمَا فَوۡقَهَا ؕ فَاَمَّا الَّذِيۡنَ اٰمَنُوۡا فَيَعۡلَمُوۡنَ اَنَّهُ الۡحَقُّ مِنۡ رَّبِّهِمۡ ۚ وَاَمَّا الَّذِيۡنَ كَفَرُوۡا فَيَقُوۡلُوۡنَ مَاذَآ اَرَادَ اللّٰهُ بِهٰذَا مَثَلًا ۘ يُضِلُّ بِهٖ كَثِيۡرًا وَّيَهۡدِىۡ بِهٖ كَثِيۡرًا ؕ وَمَا يُضِلُّ بِهٖۤ اِلَّا الۡفٰسِقِيۡنَ ۙ ﴿۲۶﴾

ल्याउँछ र पथ-विचलित त उसले अवज्ञाकारीहरूलाई मात्र गर्दछ ।

२७) जिनी मानिसहरूले अल्लाहसँग गरेको दृढ प्रतिज्ञालाई भंग गर्दछन् र जसलाई (हार नाता) अल्लाहले जोडिराख्ने आदेश गरेको छ, त्यसलाई बिच्छेद गर्दछन्, र पृथ्वीमा उपद्रव गर्दछन्, यिनीहरूले नै हानि भोग्ने छन् ।

الَّذِينَ يَنْقُضُونَ عَهْدَ اللَّهِ مِنْ بَعْدِ مِيثَاقِهِ
وَيَقْطَعُونَ مَا أَمَرَ اللَّهُ بِهِ أَنْ يُوصَلَ
وَيُفْسِدُونَ فِي الْأَرْضِ ۚ أُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٢٧﴾

२८) तिमीले अल्लाहलाई कसरी नकार्दछौ? जबकि तिमी मृत थियौ, त उसले तिमीलाई जीवित पाऱ्यो फेरि उसैले मार्नेछ, फेरि जीवित पार्ने छ, अनि मरेपछि उसैतिर फर्काइनेछौ ।

كَيْفَ تَكْفُرُونَ بِاللَّهِ وَكُنْتُمْ أَمْوَاتًا
فَأَحْيَاكُمْ ۖ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يُحْيِيكُمْ ثُمَّ
إِلَيْهِ تُرْجَعُونَ ﴿٢٨﴾

२९) उही नै हो जसले तिम्रो लागि पृथ्वीमा भएका सारा कुराको सृष्टि गऱ्यो । अनि आकाशतिर ध्यान दियो, र ठीक ठाक सातवटा आकाश बनायो र ऊ सबै कुराको ज्ञाता हो ।

هُوَ الَّذِي خَلَقَ لَكُمْ مَا فِي الْأَرْضِ جَمِيعًا ثُمَّ
اسْتَوَىٰ إِلَى السَّمَاءِ فَسَوَّاهُنَّ سَبْعَ سَمَاوَاتٍ ۚ وَهُوَ
بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٢٩﴾

३०) र, जब तिम्रो पालनकर्ताले फरिश्ताहरूसंग (स्वर्ग दूत) भन्यो म पृथ्वीमा खलिफा (अर्को प्राणी) नियुक्त गर्ने वालाछु, त तिनीहरूले भने, के तिमी यस्तोलाई (मानिस) सृजना गर्नेछौ, जसले पृथ्वीमा उपद्रव र रक्तपात गर्नेछ ? जबकि हामी तिम्रो स्तुति र पवित्रताका

وَإِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي جَاعِلٌ فِي الْأَرْضِ
خَلِيفَةً ۖ قَالُوا أَتَجْعَلُ فِيهَا مَنْ يُفْسِدُ فِيهَا وَيَسْفِكُ
الدِّمَاءَ وَنَحْنُ نُسَبِّحُ بِحَمْدِكَ وَنُقَدِّسُ لَكَ ۖ قَالَ
إِنِّي أَعْلَمُ مَا لَا تَعْلَمُونَ ﴿٣٠﴾

गुणगान गरिराख्दछौं । (अल्लाहले) भन्योः जे म जान्दछु, तिमी जान्दैनौ ।

وَعَلَّمَ اٰدَمَ الْاَسْمَآءَ كُلَّهَا ثُمَّ عَرَضَهُمْ عَلَى الْمَلٰٓئِكَةِ
فَقَالَ اَنْۢبِـُٔوْنِیْ بِاَسْمَآءِ هٰٓؤُلَآءِ اِنْ كُنْتُمْ صٰدِقِیْنَ ﴿۳۱﴾

३१) र, उसले आदमलाई सबै (वस्तुहरूको) नाम सिकाई ती कुराहरूलाई फरिश्ताहरू समक्ष प्रस्तुत गरेर भन्योः तिमी सत्य छौं भने मलाई यी कुराहरूको नाम भन ।

قَالُوْا سُبْحٰنَكَ لَا عِلْمَ لَنَآ اِلَّا مَا عَلَّمْتَنَا ؕ اِنَّكَ اَنْتَ
الْعَلِیْمُ الْحَكِیْمُ ﴿۳۲﴾

३२) तिनीहरू सबैले भनेः हे अल्लाह तिमी पवित्र छौ । तिमीले जेजति ज्ञान हामीलाई प्रदान गरेका छौ, त्यस बाहेक हामीलाई केही थाहा छैन । निःसन्देह तिमी सर्वज्ञाता र तत्वदर्शी छौ ।

قَالَ یٰۤاٰدَمُ اَنْۢبِئْهُمْ بِاَسْمَآئِهِمْ ۚ فَلَمَّاۤ اَنْۢبَاَهُمْ
بِاَسْمَآئِهِمْ ۙ قَالَ اَلَمْ اَقُلْ لَّكُمْ اِنِّیْۤ اَعْلَمُ غَیْبَ السَّمٰوٰتِ
وَالْاَرْضِ ۙ وَاَعْلَمُ مَا تُبْدُوْنَ وَمَا كُنْتُمْ تَكْتُمُوْنَ ﴿۳۳﴾

३३) अल्लाहले आदमलाई आदेश दियो, "तिमीले ती कुराहरूको नाम भन । जब उनले ती कुराहरूको नाम भनिसके तब अल्लाहले भन्यो, के मैले तिमीहरूसित (पहिलानै) भनेको थिएन कि आकाशहरू र पृथ्वीका सारा अदृश्य कुराहरूलाई म नै जान्दछु र जे तिमी प्रकट गर्दछौ, अथवा लुकाई राख्दछौ (सबै) मलाई थाहा छ ।

وَاِذْ قُلْنَا لِلْمَلٰٓئِكَةِ اسْجُدُوْا لِاٰدَمَ فَسَجَدُوْۤا اِلَّاۤ
اِبْلِیْسَ ؕ اَبٰى وَاسْتَكْبَرَ ۗ وَكَانَ مِنَ الْكٰفِرِیْنَ ﴿۳۴﴾

३४) र जब हामीले फरिश्ताहरूलाई, आदमलाई ढोग्न आदेश दियौं, तब इब्लीस बाहेक सबैले ढोगिहाले, उसले इन्कार र घमण्ड गर्‍यो, र ऊ काफिर मध्येको नै थियो ।

وَقُلْنَا يٰٓاٰدَمُ اسْكُنْ اَنْتَ وَزَوْجُكَ الْجَنَّةَ وَكُلَا مِنْهَا رَغَدًا حَيْثُ شِئْتُمَا ۠ وَلَا تَقْرَبَا هٰذِهِ الشَّجَرَةَ فَتَكُوْنَا مِنَ الظّٰلِمِيْنَ ۝٣٥

३५) र हामीले भन्यौं, हे आदम ! तिमी र तिम्रो पत्नी (हव्वा) स्वर्गमा बस र जे जहाँबाट इच्छा भए खाऊ तर यस रुख नजिक पनि नजानु अन्यथा तिमी अत्याचारी हुनेछौ ।

فَاَزَلَّهُمَا الشَّيْطٰنُ عَنْهَا فَاَخْرَجَهُمَا مِمَّا كَانَا فِيْهِ ۠ وَقُلْنَا اهْبِطُوْا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۚ وَلَكُمْ فِي الْاَرْضِ مُسْتَقَرٌّ وَّمَتَاعٌ اِلٰى حِيْنٍ ۝٣٦

३६) तर शैतानले तिनीहरूलाई विचलित गराएर त्यहाँबाट निष्कासित गराई नै हाल्यो, र हामीले भन्यौं स्वर्गबाट झरी हाल तिमी एक अर्काको शत्रु हौ, र तिमीहरूलाई पृथ्वीमा एक निश्चित समयसम्म बस्नु र फाइदा लिनु छ ।

فَتَلَقّٰٓى اٰدَمُ مِنْ رَّبِّهٖ كَلِمٰتٍ فَتَابَ عَلَيْهِ ۭ اِنَّهٗ هُوَ التَّوَّابُ الرَّحِيْمُ ۝٣٧

३७) (अनि) आदमले आफ्नो पालनकर्ताबाट केही कुरा सिक्नुभयो अनि अल्लाहले उहाँको तौबा (प्रयाश्चित)लाई स्वीकार गऱ्यो । निःसन्देह उही क्षमादाता (र) असीम दयालु हो ।

قُلْنَا اهْبِطُوْا مِنْهَا جَمِيْعًا ۚ فَاِمَّا يَاْتِيَنَّكُمْ مِّنِّىْ هُدًى فَمَنْ تَبِعَ هُدَاىَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ۝٣٨

३८) हामीले भन्यौं तिमी सबै यहाँबाट गइ हाल, जब तिमीहरू सम्म मेरा मार्गदर्शन आउनेछ त जसले त्यसको पालना गऱ्यो तिनीहरूको लागि कुनै भय र चिन्ता हुनेछैन् ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ۝٣٩

३९) र, जसले इन्कार गरे, र हाम्रा आयातहरूलाई मिथ्या ठाने, ती जहन्नमी (नर्कीय) हुन् र त्यसैमा सधैं रहनेछन् ।

يٰبَنِىْٓ اِسْرَاۗءِيْلَ اذْكُرُوْا نِعْمَتِىَ الَّتِىْٓ اَنْعَمْتُ عَلَيْكُمْ وَاَوْفُوْا بِعَهْدِىْٓ اُوْفِ بِعَهْدِكُمْ ۚ وَاِيَّاىَ فَارْهَبُوْنِ ۝٤٠

४०) हे याकूबका सन्तति ! मेरो त्यस वरदानको सम्झना गर, जुन मैले तिमीहरूलाई प्रदान गरेको र मेरो

संकल्पलाई पूरा गर । म तिम्रो वाचा पूरा गर्नेछु र म संग मात्र डर मान ।

وَاٰمِنُوْا بِمَآ اَنْزَلْتُ مُصَدِّقًا لِّمَا مَعَكُمْ وَلَا تَكُوْنُوْٓا اَوَّلَ كَافِرٍۢ بِهٖ ۖ وَلَا تَشْتَرُوْا بِاٰيٰتِيْ ثَمَنًا قَلِيْلًا ۡ وَّاِيَّايَ فَاتَّقُوْنِ ﴿٤١﴾

४१) र, जुन किताबलाई मैले तिम्रा ग्रन्थहरूको पुष्ट्याईको लागि उतारेको छु त्यसलाई सत्यमान यसका साथै तिमी नै प्रथम काफिर न बन र मेरा आयतहरूलाई तुच्छ मोलमा नबेच र म संग मात्र डर मान ।

وَلَا تَلْبِسُوا الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُوا الْحَقَّ وَاَنْتُمْ تَعْلَمُوْنَ ﴿٤٢﴾

४२) र, सत्यलाई असत्यसँग नमिसाऊ र साँचो कुरा नलुकाऊ तिमीलाई त स्वयम् यसको जानकारी छ ।

وَاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَارْكَعُوْا مَعَ الرّٰكِعِيْنَ ﴿٤٣﴾

४३) र, नमाज़ पढ्ने गर र जकात (दान) दिने गर र ढोग्नेहरूसँग ढोग्ने गर ।

اَتَاْمُرُوْنَ النَّاسَ بِالْبِرِّ وَتَنْسَوْنَ اَنْفُسَكُمْ وَاَنْتُمْ تَتْلُوْنَ الْكِتٰبَ ۭ اَفَلَا تَعْقِلُوْنَ ﴿٤٤﴾

४४) के (तिमीहरू) अर्कालाई असल काम गर्न आदेश दिन्छौ र आफू स्वयम्लाई बिर्सि दिन्छौ, जबकि तिमीहरू किताब पढ्छौ, के यतिपनि तिमीहरू बुझ्दैनौं ?

وَاسْتَعِيْنُوْا بِالصَّبْرِ وَالصَّلٰوةِ ۭ وَاِنَّهَا لَكَبِيْرَةٌ اِلَّا عَلَى الْخٰشِعِيْنَ ﴿٤٥﴾

४५) एवं, धैर्य र नमाज पढेर मद्दत माग्ने गर, निश्चय नै यो (नमाज), डर मान्नेहरू बाहेक अरुका लागि गाह्रो कुरा हो ।

الَّذِيْنَ يَظُنُّوْنَ اَنَّهُمْ مُّلٰقُوْا رَبِّهِمْ وَاَنَّهُمْ اِلَيْهِ رٰجِعُوْنَ ﴿٤٦﴾

४६) जो जान्दछन् कि आफ्ना पालनकर्तालाई भेट्नुछ र निश्चय उनैतिर फर्केर जानु छ ।

يٰبَنِيٓ اِسۡرَآءِيۡلَ اذۡكُرُوۡا نِعۡمَتِيَ الَّتِيۡٓ اَنۡعَمۡتُ عَلَيۡكُمۡ وَاَنِّيۡ فَضَّلۡتُكُمۡ عَلَى الۡعٰلَمِيۡنَ ﴿٤٧﴾

४७) हे याकुबका सन्तति ! मेरा ती उपकारहरूलाई स्मरण गर, जुन मैले तिमीहरूमाथि गरेको छु । र मैले तिमीहरूलाई संसारका अन्य मानिसहरूमाथि श्रेष्ठता प्रदान गरेको छु ।

وَاتَّقُوۡا يَوۡمًا لَّا تَجۡزِيۡ نَفۡسٌ عَنۡ نَّفۡسٍ شَيۡـًٔا وَّلَا يُقۡبَلُ مِنۡهَا شَفَاعَةٌ وَّلَا يُؤۡخَذُ مِنۡهَا عَدۡلٌ وَّلَا هُمۡ يُنۡصَرُوۡنَ ﴿٤٨﴾

४८) त्यस दिनसित डर मान्ने गर, जब कसैले कसैलाई फाइदा पुऱ्याउन सक्तैन र न कसैको सिफारिस स्वीकारिने छ र न कुनै बदला लिइने छ र न उनीहरूलाई (कसैको) मद्दत प्राप्त हुनेछ ।

وَاِذۡ نَجَّيۡنٰكُمۡ مِّنۡ اٰلِ فِرۡعَوۡنَ يَسُوۡمُوۡنَكُمۡ سُوۡٓءَ الۡعَذَابِ يُذَبِّحُوۡنَ اَبۡنَآءَكُمۡ وَيَسۡتَحۡيُوۡنَ نِسَآءَكُمۡ‌ؕ وَفِيۡ ذٰلِكُمۡ بَلَآءٌ مِّنۡ رَّبِّكُمۡ عَظِيۡمٌ ﴿٤٩﴾

४९) र, जब हामीले तिमीहरूलाई फिरऔनीहरूबाट मुक्त गरायौं, जसले तिमीहरूलाई क्रुर यातना दिन्थे, तिम्रा छोराहरूलाई मारिदिन्थे र छोरीहरूलाई जीवित छाडी दिन्थे, यस मुक्तिलाई प्रदान गर्नुमा तिम्रो पालनकर्ताको ठूलो कृपा थियो ।

وَاِذۡ فَرَقۡنَا بِكُمُ الۡبَحۡرَ فَاَنۡجَيۡنٰكُمۡ وَاَغۡرَقۡنَآ اٰلَ فِرۡعَوۡنَ وَاَنۡتُمۡ تَنۡظُرُوۡنَ ﴿٥٠﴾

५०) र, जब हामीले तिम्रा लागि समुन्द्रलाई चीरेर तिमीलाई पारी पुऱ्यायौं र फिरऔनीहरूलाई तिम्रा आँखा अगाडि त्यसमा डुबाई दियौं ।

وَاِذۡ وٰعَدۡنَا مُوۡسٰٓى اَرۡبَعِيۡنَ لَيۡلَةً ثُمَّ اتَّخَذۡتُمُ الۡعِجۡلَ مِنۡۢ بَعۡدِهٖ وَاَنۡتُمۡ ظٰلِمُوۡنَ ﴿٥١﴾

५१) र, जब हामीले मूसासित चालिस रातको वाचा गऱ्यौं, अनि तिमीले उनको अनुपस्थितिमा बाछ्छोलाई पूज्न थाल्यौ र अपराधी बन्यौ ।

| | |
|---|---|
| ५२) तर हामीले तिमीलाई त्यसपछि पनि क्षमा गरिदियौं, ताकि तिमी कृतज्ञ बन । | ثُمَّ عَفَوْنَا عَنْكُمْ مِّنْ بَعْدِ ذٰلِكَ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٥٢﴾ |
| ५३) र, जब हामीले मूसालाई तिम्रो मार्ग दर्शनका लागि किताब (तौरेत) र चमत्कारहरू प्रदान गऱ्यौं, ताकि तिमीहरू सत्य मार्गमा हिंडन सक । | وَاِذْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَالْفُرْقَانَ لَعَلَّكُمْ تَهْتَدُوْنَ ﴿٥٣﴾ |
| ५४) र जब मूसाले आफ्ना जातिका मानिसहरूसित भने हे मेरा जाति वालाहरू तिमीहरूले बाछोलाई पूजेर आफूमाथि अत्याचार गरेका छौ तसर्थ आफ्नो स्रष्टातिर फर्क आफ्ना ज्यान (अपराधीका ज्यान) लाई आफनै हाथले हत्यागर । अल्लाह सामु तिम्रो भलो यसैमा छ, अनि उसले तिम्रो गल्ती माफ गरिदियो । ऊ निःसन्देह क्षमाशील र अत्यन्त दयालु छ । | وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ اِنَّكُمْ ظَلَمْتُمْ اَنْفُسَكُمْ بِاتِّخَاذِكُمُ الْعِجْلَ فَتُوْبُوْٓا اِلٰى بَارِىِٕكُمْ فَاقْتُلُوْٓا اَنْفُسَكُمْ ۭ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ عِنْدَ بَارِىِٕكُمْ ۭ فَتَابَ عَلَيْكُمْ ۭ اِنَّهٗ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿٥٤﴾ |
| ५५) र, जब तिमीहरूले मूसासित भन्यौ, कि ! हामी आफ्नो अगाडि प्रत्यक्ष रूपमा अल्लाहलाई न देखुन्जेल कदापि विश्वास गर्दैनौं, त तिमीले हेर्दा हेर्दै तिनीहरूमाथि चट्याङ्ग खस्यो । | وَاِذْ قُلْتُمْ يٰمُوْسٰى لَنْ نُّؤْمِنَ لَكَ حَتّٰى نَرَى اللّٰهَ جَهْرَةً فَاَخَذَتْكُمُ الصّٰعِقَةُ وَاَنْتُمْ تَنْظُرُوْنَ ﴿٥٥﴾ |
| ५६) तर फेरि त्यस मृत्युपछि पनि हामीले तिमीहरूलाई पुनर्जीवित गऱ्यौं ताकि तिमी आभारी हुनसक । | ثُمَّ بَعَثْنٰكُمْ مِّنْ بَعْدِ مَوْتِكُمْ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٥٦﴾ |
| ५७) र, तिमीहरूमाथि हामीले बादलको छायाँ गरिदिएँ र तिम्रा लागि मन्न | وَظَلَّلْنَا عَلَيْكُمُ الْغَمَامَ وَاَنْزَلْنَا عَلَيْكُمُ الْمَنَّ وَالسَّلْوٰى ۭ كُلُوْا مِنْ طَيِّبٰتِ مَا رَزَقْنٰكُمْ ۭ |

وَمَا ظَلَمُونَا وَلَٰكِن كَانُوٓا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٥٧﴾

व सल्वा उतान्यौं । हामीले दिएको पवित्र कुराहरू खाऊ, र उनीहरूले हामी माथि कुनै अन्याय गरेनन् बरु आफ्नै जिउमाथि अन्याय गर्दथे ।

وَإِذْ قُلْنَا ادْخُلُوا هَٰذِهِ الْقَرْيَةَ فَكُلُوا مِنْهَا حَيْثُ شِئْتُمْ رَغَدًا وَادْخُلُوا الْبَابَ سُجَّدًا وَقُولُوا حِطَّةٌ نَّغْفِرْ لَكُمْ خَطَايَاكُمْ ۚ وَسَنَزِيدُ الْمُحْسِنِينَ ﴿٥٨﴾

५८) र, यादगर जब हामीले भन्यौं कि यस बस्तीमा जाऊ र यसमा जे थोक जहाँ कही छ इच्छाअनुसार खानु, पिउनु र ढोकामा नतमस्तक हुँदै प्रवेश गर्नु र "हित्ततुन" (हामी क्षमा चाहान्छौं) भन्नु, हामीले तिम्रा गल्तीहरूलाई क्षमा गरिदिनेछौं, र असल काम गर्नेहरूलाई अझ बढी प्रदान गर्नेछौं ।

فَبَدَّلَ الَّذِينَ ظَلَمُوا قَوْلًا غَيْرَ الَّذِي قِيلَ لَهُمْ فَأَنزَلْنَا عَلَى الَّذِينَ ظَلَمُوا رِجْزًا مِّنَ السَّمَاءِ بِمَا كَانُوا يَفْسُقُونَ ﴿٥٩﴾

५९) अनि अन्यायीहरूले, तिनीहरूलाई दिइएको आदेशका शब्दलाई परिवर्तन गरिहाले, त हामीले पनि ती अन्यायीहरूमाथि उनको अवज्ञताको कारणले दैवी सजाय गऱ्यौं ।

وَإِذِ اسْتَسْقَىٰ مُوسَىٰ لِقَوْمِهِ فَقُلْنَا اضْرِب بِّعَصَاكَ الْحَجَرَ ۖ فَانفَجَرَتْ مِنْهُ اثْنَتَا عَشْرَةَ عَيْنًا ۖ قَدْ عَلِمَ كُلُّ أُنَاسٍ مَّشْرَبَهُمْ ۖ كُلُوا وَاشْرَبُوا مِن رِّزْقِ اللَّهِ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿٦٠﴾

६०) र, जब मूसाले आफ्नो समुदायका लागि पानी माँगे तब हामीले भन्यौं कि आफ्नो लट्ठीले ढुङ्गामाथि हान, त्यसबाट बाह्रवटा मूल फूटे र सबै समूहले आ-आफ्नो घाट थाहा पाइहाले । अल्लाहले (प्रदान गरेको) कुरा खाऊ र पिऊ तर पृथ्वीमा उपद्रव गर्दै नहिंड ।

وَإِذْ قُلْتُمْ يَا مُوسَىٰ لَن نَّصْبِرَ عَلَىٰ طَعَامٍ وَاحِدٍ فَادْعُ لَنَا رَبَّكَ يُخْرِجْ لَنَا مِمَّا تُنبِتُ الْأَرْضُ مِن

६१) र, जब तिमीले भन्यौ कि हे मूसा ! हामी एउटै प्रकारको आहारमा

بَقْلِهَا وَقِثَّآئِهَا وَفُوْمِهَا وَعَدَسِهَا وَبَصَلِهَا ۖ
قَالَ اَتَسْتَبْدِلُوْنَ الَّذِیْ هُوَ اَدْنٰی بِالَّذِیْ هُوَ
خَیْرٌ ۚ اِهْبِطُوْا مِصْرًا فَاِنَّ لَكُمْ مَّا سَاَلْتُمْ ۗ
وَضُرِبَتْ عَلَیْهِمُ الذِّلَّةُ وَالْمَسْكَنَةُ وَبَآءُوْ بِغَضَبٍ
مِّنَ اللّٰهِ ۗ ذٰلِكَ بِاَنَّهُمْ كَانُوْا یَكْفُرُوْنَ
بِاٰیٰتِ اللّٰهِ وَیَقْتُلُوْنَ النَّبِیّٖنَ بِغَیْرِ الْحَقِّ ۗ
ذٰلِكَ بِمَا عَصَوْا وَّكَانُوْا یَعْتَدُوْنَ ﴿٦١﴾

सन्तुष्ट हुन सक्तैनौं । तसर्थ आफ्नो पालनहारसँग प्रार्थना गर्नुस् कि उनीले हाम्रो निम्ति साग-सब्जी, काँक्रा, गहुँ, मसुरो र प्याज (आदि) जो जमिनबाट उम्रन्छन्, हामीलाई देउन् । उनले भने कि ठुलो कुराको सट्टा सानो कुरा किन चाहन्छौ ? ठीक छ ! शहरतिर लाग, तिमीले चाहेको यी सबै कुरा पाउनेछौ । र, उनीहरूमाथि अपमान र अभाव लादियो र तिनीहरू अल्लाहका रीसका पात्र भए । यो यस कारणले भयो कि तिनीहरूले अल्लाहका आयतहरूलाई इन्कार गर्दथे र दूतहरूलाई अकारण मार्दथे । यो उनीहरूको अवज्ञा र ज्यादतीको परिणाम हो ।

اِنَّ الَّذِیْنَ اٰمَنُوْا وَالَّذِیْنَ هَادُوْا وَالنَّصٰرٰی
وَالصّٰبِـِٕیْنَ مَنْ اٰمَنَ بِاللّٰهِ وَالْیَوْمِ الْاٰخِرِ وَعَمِلَ
صَالِحًا فَلَهُمْ اَجْرُهُمْ عِنْدَ رَبِّهِمْ ۚ وَلَا خَوْفٌ
عَلَیْهِمْ وَلَا هُمْ یَحْزَنُوْنَ ﴿٦٢﴾

६२) निःसंदेह मुसलमान होऊन्, यहूदी होऊन्, ईसाई होऊन् या पारसी जो, अल्लाह र अन्तिम दिनमाथि आस्था राख्यो र असल काम गऱ्यो त्यस्ता व्यक्तिहरूलाई तिनका फल, अल्लाह कहाँ प्राप्त हुनेछ । र तिनीहरूलाई नत कुनै प्रकारको भयत्रास हुनेछ र न उदासी नै ।

وَاِذْ اَخَذْنَا مِیْثَاقَكُمْ وَرَفَعْنَا فَوْقَكُمُ الطُّوْرَ ؕ خُذُوْا
مَآ اٰتَیْنٰكُمْ بِقُوَّةٍ وَّاذْكُرُوْا مَا فِیْهِ لَعَلَّكُمْ
تَتَّقُوْنَ ﴿٦٣﴾

६३) र यादगर जब हामीले तिमीसित वाचा लियौं र तूर पर्वतलाई तिमीमाथि ठड्यायौं । कि जुन (पुस्तक) हामीले तिमीलाई प्रदान गरेका छौं, त्यसलाई बलपूर्वक

समातिराख र त्यसमा जे छ, त्यो याद राख ताकि तिमी बाँच्न सक ।

६४) तर त्यसपछि पनि तिमीहरू त्यस वाचाबाट विमुख भइहाल्यौ, र यदि तिमीमाथि अल्लाहको वरदान र कृपा नभएको भए, तिमी ठूलो हानिमा पर्ने थियौ ।

ثُمَّ تَوَلَّيْتُم مِّنۢ بَعْدِ ذَٰلِكَ ۖ فَلَوْلَا فَضْلُ ٱللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُۥ لَكُنتُم مِّنَ ٱلْخَٰسِرِينَ ﴿٦٤﴾

६५) र तिमीलाई निःसन्देह ती मानिसहरूको जानकारी छ, जो तिमीमध्ये, शनिवारको दिनमा सीमा नाघिसकेका थिए र हामीले पनि उनीहरूलाई भनि दियौं, तिमीहरू अपमानित बाँदरहरू भइहाल ।

وَلَقَدْ عَلِمْتُمُ ٱلَّذِينَ ٱعْتَدَوْا۟ مِنكُمْ فِى ٱلسَّبْتِ فَقُلْنَا لَهُمْ كُونُوا۟ قِرَدَةً خَٰسِـِٔينَ ﴿٦٥﴾

६६) यसलाई हामीले पहिला आएका र पछि आउने मानिसहरूको लागि दृष्टान्त र आस्थावानहरूका लागि उपदेश र नसीहत बनायौं ।

فَجَعَلْنَٰهَا نَكَٰلًا لِّمَا بَيْنَ يَدَيْهَا وَمَا خَلْفَهَا وَمَوْعِظَةً لِّلْمُتَّقِينَ ﴿٦٦﴾

६७) र यादगर जब मूसाले आफ्नो समुदायसित भने कि अल्लाहले तिमीलाई आदेश दिंदाछ कि एउटा गाई बलिदेऊ । तिनीहरूले भने, के तिमी हामीसँग ठट्टा गर्दछौ ? उहाँले भन्नुभयो कि यस्तो मूर्ख हुनु भन्दा म अल्लाहको शरणमा जान्छु ।

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِۦٓ إِنَّ ٱللَّهَ يَأْمُرُكُمْ أَن تَذْبَحُوا۟ بَقَرَةً ۖ قَالُوٓا۟ أَتَتَّخِذُنَا هُزُوًا ۖ قَالَ أَعُوذُ بِٱللَّهِ أَنْ أَكُونَ مِنَ ٱلْجَٰهِلِينَ ﴿٦٧﴾

६८) तिनीहरूले भने, हे मूसा आफ्नो पालनकर्तासित प्रार्थना गर्नुस् कि उहाँले हामीलाई स्पष्ट पारोस् कि

قَالُوا۟ ٱدْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا هِىَ ۚ قَالَ إِنَّهُۥ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَّا فَارِضٌ وَلَا بِكْرٌ عَوَانٌۢ بَيْنَ ذَٰلِكَ ۖ فَٱفْعَلُوا۟ مَا تُؤْمَرُونَ ﴿٦٨﴾

त्यो (गाई) कस्तो हुनु पर्छ : उहाँले (मूसा) भन्नुभयो, पालनकर्ताको भनाई छ कि त्यो गाई नत बूढी होस् नत बाछी बरु दुईटैको बीचको होस् । तसर्थ तिमीहरू आदेश अनुसार गर ।

६९) तिनीहरूले फेरि भनेः आफ्नो पालनहारसँग प्रार्थना गर्नुस् कि हामीलाई यो पनि बताओस् कि त्यसको रङ्ग कस्तो हुनुपर्दछ । मूसाले भने, अल्लाहको भनाई छ कि त्यसको रङ्ग गहिरो पहेंलो होस् ताकि हेर्नेहरूलाई प्रसन्न गरोस् ।

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا لَوْنُهَا ۚ قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ صَفْرَاءُ فَاقِعٌ لَّوْنُهَا تَسُرُّ النَّاظِرِينَ ﴿٦٩﴾

७०) तिनीहरूले भने पालनकर्तासँग एकचोटी फेरि विन्ती गर्नुस् कि त्यो कस्तो हुनुपर्दछ । किनकि हामीलाई धेरै गाईहरू उस्तै-उस्तै देखिएका छन् । हामीलाई थाहा हुँदैन, अल्लाहले चाह्यो भने हामी सही बाटो लाग्ने छौं ।

قَالُوا ادْعُ لَنَا رَبَّكَ يُبَيِّن لَّنَا مَا هِيَ إِنَّ الْبَقَرَ تَشَابَهَ عَلَيْنَا وَإِنَّا إِن شَاءَ اللَّهُ لَمُهْتَدُونَ ﴿٧٠﴾

७१) मूसाले भने, अल्लाहले भनिरहेछन् कि त्यो गाई खेत जोत्न र सिंचाईमा प्रयोग नगरिएको र हिष्ट-पुष्ट र बेदाग होस् । उनीहरूले भन्न थाले अब तिमीले सबै कुरा ठीक-ठीक भनिहालेका छौ । अर्थात् त्यो गाईलाई बलि दिए, यद्यपि तिनीहरू त्यस्तो गर्नेवाला थिएनन् ।

قَالَ إِنَّهُ يَقُولُ إِنَّهَا بَقَرَةٌ لَّا ذَلُولٌ تُثِيرُ الْأَرْضَ وَلَا تَسْقِي الْحَرْثَ مُسَلَّمَةٌ لَّا شِيَةَ فِيهَا ۚ قَالُوا الْآنَ جِئْتَ بِالْحَقِّ ۚ فَذَبَحُوهَا وَمَا كَادُوا يَفْعَلُونَ ﴿٧١﴾

७२) र यादगार जब तिमीले एउटा मानिसको हत्या गर्‍यौ, अनि त्यसको (बारेमा) झगडा गर्न थाल्यौ, तर जुन कुरो तिमीले लुकाउन चाहन्थ्यौ, त्यो कुरा अल्लाहले प्रकट गर्न चाहन्थ्यो ।

وَإِذْ قَتَلْتُمْ نَفْسًا فَادّٰرَءْتُمْ فِيهَا ۖ وَاللّٰهُ مُخْرِجٌ مَّا كُنْتُمْ تَكْتُمُونَ ﴿٧٢﴾

७३) अनि हामीले भन्यौं: कि यस गाईको एउटा टुक्राले हत्या गरिएको मान्छेलाई हानी देउ, (ऊ जीवित हुनेछ) यसरी नै अल्लाहले मुर्दाहरूलाई जीवित पारी तिमीलाई तिम्रा बुद्धिमानीका लागि आफ्ना चिन्हहरू देखाई रहेछ ।

فَقُلْنَا اضْرِبُوهُ بِبَعْضِهَا ۚ كَذٰلِكَ يُحْيِ اللّٰهُ الْمَوْتٰى وَيُرِيكُمْ اٰيٰتِهِ لَعَلَّكُمْ تَعْقِلُونَ ﴿٧٣﴾

७४) फेरि त्यसपछि तिम्रा हृदयहरू ढुङ्गाजस्तो बरु त्यो भन्दा पनि कठोर भइहाले किन भने केही ढुङ्गा त यस्ता हुन्छन् कि फुटेर तिनबाट नहरहरू बग्न थाल्छन् । र केही यस्ता हुन्छन् कि फुटी हाल्छन् र तिनबाट पानी निस्कन्छ । र कुनै यस्ता हुन्छन् कि अल्लाहको भयले खसिहाल्छन् । र अल्लाह तिम्रा क्रियाकलापबाट अनभिज्ञ छैन ।

ثُمَّ قَسَتْ قُلُوبُكُمْ مِّنْ بَعْدِ ذٰلِكَ فَهِيَ كَالْحِجَارَةِ أَوْ أَشَدُّ قَسْوَةً ۚ وَإِنَّ مِنَ الْحِجَارَةِ لَمَا يَتَفَجَّرُ مِنْهُ الْأَنْهٰرُ ۚ وَإِنَّ مِنْهَا لَمَا يَشَّقَّقُ فَيَخْرُجُ مِنْهُ الْمَآءُ ۚ وَإِنَّ مِنْهَا لَمَا يَهْبِطُ مِنْ خَشْيَةِ اللّٰهِ ۗ وَمَا اللّٰهُ بِغٰفِلٍ عَمَّا تَعْمَلُونَ ﴿٧٤﴾

७५) (मुस्लिमहरू हो !) के तिमी आशा गर्दछौ कि यिनीहरू तिमीहरू प्रति आस्थावान बनुन् ? हुन त ती मध्ये केहीले अल्लाहका कुरा सुनेर, जानी बुझी पनि त्यसलाई परिवर्तन गर्ने गर्दछन् ।

أَفَتَطْمَعُونَ أَنْ يُّؤْمِنُوا لَكُمْ وَقَدْ كَانَ فَرِيقٌ مِّنْهُمْ يَسْمَعُونَ كَلٰمَ اللّٰهِ ثُمَّ يُحَرِّفُونَهُ مِنْ بَعْدِ مَا عَقَلُوهُ وَهُمْ يَعْلَمُونَ ﴿٧٥﴾

وَإِذَا لَقُوا الَّذِينَ آمَنُوا قَالُوا آمَنَّا وَإِذَا خَلَا بَعْضُهُمْ إِلَىٰ بَعْضٍ قَالُوا أَتُحَدِّثُونَهُم بِمَا فَتَحَ اللَّهُ عَلَيْكُمْ لِيُحَاجُّوكُم بِهِ عِندَ رَبِّكُمْ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٧٦﴾

७६) जब यिनीहरू मोमिनहरूसंग भेट्दछन्: त आफू आस्थावान भएको कुरा गर्दछन् । र जुनबेला आपसमा एक अर्कालाई भेट्दछन्, त्यतिखेर भन्दछन् कि जुन कुरा अल्लाहले तिमीलाई प्रकट गरेको छ, त्यो तिमीले तिनीहरूलाई (मुस्लिमहरू) किन भनिहाल्छौ ? कि (अन्तिम दिन) त्यसैको सन्दर्भले तिम्रो पालनहारको अगाडि तिमीलाई दोषी ठहराइनेछ । के तिमी बुझ्दैनौ ?

أَوَلَا يَعْلَمُونَ أَنَّ اللَّهَ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ﴿٧٧﴾

७७) के यिनलाई थाहा छैन कि, अल्लाहलाई यिनको भित्री र बाहिरी कुरा (सबै) थाहा छ ।

وَمِنْهُمْ أُمِّيُّونَ لَا يَعْلَمُونَ الْكِتَابَ إِلَّا أَمَانِيَّ وَإِنْ هُمْ إِلَّا يَظُنُّونَ ﴿٧٨﴾

७८) र तिनीहरू मध्ये केही यस्ता अनपढ छन्, जो आशाहरू बाहेक (अल्लाहको) किताब जान्दैनन् र तिनीहरूले अनुमान र अटकलबाजी मात्र गर्दछन् ।

فَوَيْلٌ لِّلَّذِينَ يَكْتُبُونَ الْكِتَابَ بِأَيْدِيهِمْ ثُمَّ يَقُولُونَ هَٰذَا مِنْ عِندِ اللَّهِ لِيَشْتَرُوا بِهِ ثَمَنًا قَلِيلًا ۖ فَوَيْلٌ لَّهُم مِّمَّا كَتَبَتْ أَيْدِيهِمْ وَوَيْلٌ لَّهُم مِّمَّا يَكْسِبُونَ ﴿٧٩﴾

७९) उनीहरूलाई अनिष्ट छ, जो आफ्ना हातले किताब लेख्दछन् अनि भन्दछन् कि यो अल्लाहको तर्फबाट हो ताकि त्यसद्वारा तुच्छ साँसारिक लाभ प्राप्त गर्नसकुन् । तिनीहरूलाई आफ्नो हातबाट लेख्नुको कारण अनिष्ट छ र तिनीहरूलाई तिनको अनैतिक कमाइको कारण अनिष्ट छ ।

وَقَالُوا لَن تَمَسَّنَا النَّارُ إِلَّا أَيَّامًا مَّعْدُودَةً ۚ قُلْ أَتَّخَذْتُمْ عِندَ اللَّهِ عَهْدًا فَلَن يُخْلِفَ اللَّهُ عَهْدَهُ ۖ أَمْ تَقُولُونَ عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٨٠﴾

८०) र यिनी भन्दछन् कि हामी त केही दिन मात्र नर्कमा बस्ने छौं । तिनीहरूसित भनः के तिमीहरूले अल्लाहसँग कुनै वचन लिएका छौ ? यदि छ भने निःसन्देह अल्लाह आफ्नो वचनको उल्लंघन कहिल्यै गर्दैन, बरु तिमीले त अल्लाहको बारेमा यस्ता कुरा भन्दछौ जसको सम्बन्धमा तिमीलाई केही ज्ञान छैन ।

بَلَىٰ مَن كَسَبَ سَيِّئَةً وَأَحَاطَتْ بِهِ خَطِيئَتُهُ فَأُولَٰئِكَ أَصْحَابُ النَّارِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٨١﴾

८१) हो, जसले पनि नराम्रो काम गऱ्यो र त्यसको पापले त्यसलाई घेरिहाल्यो, त्यस्ता मानिसहरू सधैंका लागि दोजखमा (नर्क) रहिरहने छन् ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٨٢﴾

८२) र जो आस्थावान भए र धर्मको काम गरे, तिनी स्वर्गमा जानेहरू हुन् र सधैं त्यसमा रहने छन् ।

وَإِذْ أَخَذْنَا مِيثَاقَ بَنِي إِسْرَائِيلَ لَا تَعْبُدُونَ إِلَّا اللَّهَ وَبِالْوَالِدَيْنِ إِحْسَانًا وَذِي الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينِ وَقُولُوا لِلنَّاسِ حُسْنًا وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ ثُمَّ تَوَلَّيْتُمْ إِلَّا قَلِيلًا مِّنكُمْ وَأَنتُم مُّعْرِضُونَ ﴿٨٣﴾

८३) र जब हामीले बनी इस्राईलसित वाचा गरायौं कि अल्लाह बाहेक अरु कसैको पूजा नगर्नु, र आमा-बाबुसित राम्रो व्यवहार गर्नु यस्तै नातेदार, अनाथ र गरीबहरूसंग पनि, र मानिसहरूसंग राम्रा कुरा गर्नु, र नमाज पढ्दै गर्नु, र जकात (दान) दिंदै गर्नु । तर केही व्यक्तिहरू बाहेक तिमी (सबै) यस वचनबाट पछि फर्क्यौ र मुख फेऱ्यौ ।

८४) र जब हामीले तिमीहरूसित वचन लियौं कि आपसमा रक्तपात न गर्नु र आफन्तहरूलाई आफ्नो घरबाट न निकाल्नु, त तिमीले वचन दियौ र तिमी यसको साक्षी पनि बन्यौ ।

وَإِذْ أَخَذْنَا مِيثَاقَكُمْ لَا تَسْفِكُونَ دِمَاءَكُمْ وَلَا تُخْرِجُونَ أَنفُسَكُم مِّن دِيَارِكُمْ ثُمَّ أَقْرَرْتُمْ وَأَنتُمْ تَشْهَدُونَ ﴿٨٤﴾

८५) फेरि पनि तिमीले आफन्तहरूको हत्या गर्‍यौ र आफू मध्येकै एक समूहमाथि अत्याचार गरी तिनलाई घरबाट निकाला गर्‍यौ, र दुराचार र पापमा उनीहरूका विरुद्ध अत्याचारीहरूको मद्दत गर्‍यौ । तथा तिनीहरू तिमी कहाँ यदि बन्दी भएर आउँदा बदलामा धन तिरेर छुटाउछौ अत: तिनलाई घर-निकाला गरेको कुरा तिमीहरूकालागी वर्जित थियो । के तिमी कुनै आदेश माथि आस्था राखदछौ र केहीलाई नकारदछौ ? तिमीहरू मध्ये जसले यस्तो काम गर्दछन् उनको लागि यस संसारमा अपमान र क़यामतको दिन कठोर सजायको भोगाई बहेक अरु के हुन सक्छ । र तिम्रो आचरणसंग अल्लाह बेखबर छैन ।

ثُمَّ أَنتُمْ هَٰؤُلَاءِ تَقْتُلُونَ أَنفُسَكُمْ وَتُخْرِجُونَ فَرِيقًا مِّنكُم مِّن دِيَارِهِمْ تَظَاهَرُونَ عَلَيْهِم بِالْإِثْمِ وَالْعُدْوَانِ وَإِن يَأْتُوكُمْ أُسَارَىٰ تُفَادُوهُمْ وَهُوَ مُحَرَّمٌ عَلَيْكُمْ إِخْرَاجُهُمْ ۚ أَفَتُؤْمِنُونَ بِبَعْضِ الْكِتَابِ وَتَكْفُرُونَ بِبَعْضٍ ۚ فَمَا جَزَاءُ مَن يَفْعَلُ ذَٰلِكَ مِنكُمْ إِلَّا خِزْيٌ فِي الْحَيَاةِ الدُّنْيَا ۖ وَيَوْمَ الْقِيَامَةِ يُرَدُّونَ إِلَىٰ أَشَدِّ الْعَذَابِ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿٨٥﴾

८६) यी ती मानिसहरू नै हुन् । जसले कि परलोकको सट्टा संसारको जीवन किनेका छन् । न तिनको सजायमा कमी हुनेछ र नत तिनलाई मद्दत दिइने छ ।

أُولَٰئِكَ الَّذِينَ اشْتَرَوُا الْحَيَاةَ الدُّنْيَا بِالْآخِرَةِ ۖ فَلَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنصَرُونَ ﴿٨٦﴾

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَقَفَّيْنَا مِنْۢ بَعْدِهٖ بِالرُّسُلِ ۬ وَاٰتَيْنَا عِيْسَى ابْنَ مَرْيَمَ الْبَيِّنٰتِ وَاَيَّدْنٰهُ بِرُوْحِ الْقُدُسِ ؕ اَفَكُلَّمَا جَآءَكُمْ رَسُوْلٌۢ بِمَا لَا تَهْوٰٓى اَنْفُسُكُمُ اسْتَكْبَرْتُمْ ۚ فَفَرِيْقًا كَذَّبْتُمْ ۡ وَفَرِيْقًا تَقْتُلُوْنَ ﴿٨٧﴾

८७) हामीले मूसालाई ग्रन्थ प्रदान गर्‍यौं र उनको पछाडि अन्य रसूल पठाउँदै गर्‍यौं, र ईसा बिन मरियमलाई स्पष्ट तर्कहरू प्रदान गर्‍यौं र रूहुलकुदस (जिब्राइल) द्वारा उनको पुष्टि गर्‍यौं । तर जब कुनै अल्लाहको दूत तिमीहरूतिर यस्ता कुराहरू लिएर आए जुन कि तिमीहरूलाई रुच्दैनथ्यो तब तिमीहरू अहंकारी हुन पुग्थे र केहीलाई झूठा भने र केहीको हत्या पनि गरे ।

وَقَالُوْا قُلُوْبُنَا غُلْفٌ ؕ بَلْ لَّعَنَهُمُ اللّٰهُ بِكُفْرِهِمْ فَقَلِيْلًا مَّا يُؤْمِنُوْنَ ﴿٨٨﴾

८८) तिनीहरू भन्दछन्ः हाम्रो हृदय पर्दामा छन् । होइन, बरु अल्लाहले तिनको नास्तिकताको कारणले तिनीलाई अभिशप्त गरेको छ, तसर्थ तिनीहरूमा आस्थावान अत्यन्त थोरै छन् ।

وَلَمَّا جَآءَهُمْ كِتٰبٌ مِّنْ عِنْدِ اللّٰهِ مُصَدِّقٌ لِّمَا مَعَهُمْ ۙ وَكَانُوْا مِنْ قَبْلُ يَسْتَفْتِحُوْنَ عَلَى الَّذِيْنَ كَفَرُوْا ۚ فَلَمَّا جَآءَهُمْ مَّا عَرَفُوْا كَفَرُوْا بِهٖ ۫ فَلَعْنَةُ اللّٰهِ عَلَى الْكٰفِرِيْنَ ﴿٨٩﴾

८९) र, जब तिनीतिर अल्लाहको तर्फबाट एउटा किताब (कुरआन) जो उनको किताबलाई सत्य बताउने आयो, जबकि पहिला यिनी स्वयम् त्यसको माध्यमबाट अनास्थावानहरूमाथि विजय हासिल गर्न चाहन्थे, तर जब त्यो आयो त त्यसलाई चिन्हि सकेपछि त्यसलाई फेरि इन्कार गर्न थाले अतः अल्लाहको अभिशाप हुनेछ अनास्थावानहरू माथि ।

بِئْسَمَا اشْتَرَوْا بِهِ أَنفُسَهُمْ أَن يَكْفُرُوا بِمَا أَنزَلَ اللَّهُ بَغْيًا أَن يُنَزِّلَ اللَّهُ مِن فَضْلِهِ عَلَىٰ مَن يَشَاءُ مِنْ عِبَادِهِ ۖ فَبَاءُوا بِغَضَبٍ عَلَىٰ غَضَبٍ ۚ وَلِلْكَافِرِينَ عَذَابٌ مُّهِينٌ ﴿٩٠﴾

९०) त्यो चीज साह्रै नराम्रो छ, जसको सट्टा तिनीहरूले आफूलाई बेचिहाले, त्यो तिनीहरूको अनास्था हो, अल्लाहको तर्फबाट आएको चीजसंग मात्र यस डाहको कारण कि अल्लाहले आफ्ना भक्तहरूमध्ये जसमाथि चाह्यो आफ्नो कृपा गऱ्यो, यसकारण तिनीहरू एक क्रोध पछि अर्को क्रोधका पात्र भए । र अनास्थावानहरूका लागि अपमानजनक सजाय छ ।

وَإِذَا قِيلَ لَهُمْ آمِنُوا بِمَا أَنزَلَ اللَّهُ قَالُوا نُؤْمِنُ بِمَا أُنزِلَ عَلَيْنَا وَيَكْفُرُونَ بِمَا وَرَاءَهُ وَهُوَ الْحَقُّ مُصَدِّقًا لِّمَا مَعَهُمْ ۗ قُلْ فَلِمَ تَقْتُلُونَ أَنبِيَاءَ اللَّهِ مِن قَبْلُ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٩١﴾

९१) र, जब तिनीहरूसित भनिन्छ कि अल्लाहले प्रदान गरेको किताब माथि आस्था राख, त भन्दछन् कि जुन ग्रन्थ हामीमाथि उतारिसकिएको छ, त्यसमाथि हाम्रो आस्था छ । जबकि त्यसभन्दा पछिल्लो (किताब) जुन कि सत्य हो र तिनको (किताब तौरातको) पुष्टि गर्दछ, त्यो संग अनास्था राख्दछन् । तिनीहरूसित यो सोध कि यदि तिमी अघिल्ला किताबहरूमाथि आस्था राख्दछौ त फेरि तिमीले अल्लाहका दूतहरूलाई किन मारिदिन्थ्यौ ?

وَلَقَدْ جَاءَكُم مُّوسَىٰ بِالْبَيِّنَاتِ ثُمَّ اتَّخَذْتُمُ الْعِجْلَ مِن بَعْدِهِ وَأَنتُمْ ظَالِمُونَ ﴿٩٢﴾

९२) मूसाले तिम्रा नजिक यही तर्क लिएर आए तैपनि तिमीले बाच्छोलाई पूज्न थाल्यौ, तिमी अन्यायी नै हौ ।

९३) जब हामीले तिमीबाट वाचा लियौं र तूर पर्वतलाई तिमीमाथि उभ्यायौं । (र आदेश दियौं) कि जुन (किताब) हामीले तिमीलाई दिएका छौं त्यसलाई बेस्सरी समात र (आदेशलाई) सुन, त तिनीहरूले भने कि हामीले सुन्यौं तर मान्दैनौं, र तिनको नास्तिकताको कारणले तिनको हृदयमा बाछोको माया पलाई हाल्यो । (हे मुहम्मद स.अ.) तिनीहरूलाई भनि दिनु कि तिम्रो ईमानले तिमीलाई नराम्रो आदेश गरिरहेको छ । यदि तिमी मोमिन हौ ।

وَاِذْ اَخَذْنَا مِيْثَاقَكُمْ وَرَفَعْنَا فَوْقَكُمُ الطُّوْرَ ؕ خُذُوْا مَآ اٰتَيْنٰكُمْ بِقُوَّةٍ وَّاسْمَعُوْا ؕ قَالُوْا سَمِعْنَا وَعَصَيْنَا ٭ وَاُشْرِبُوْا فِىْ قُلُوْبِهِمُ الْعِجْلَ بِكُفْرِهِمْ ؕ قُلْ بِئْسَمَا يَاْمُرُكُمْ بِهٖۤ اِيْمَانُكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٩٣﴾

९४) (हे मुहम्मद स.अ.) भनिदिनु कि यदि परलोकको घर अरु मानिस बाहेक तिम्रा निम्ति नै निर्धारित छ, त आऊ आफ्नो सत्यताको प्रमाणमा मृत्युको प्रार्थना गर ।

قُلْ اِنْ كَانَتْ لَكُمُ الدَّارُ الْاٰخِرَةُ عِنْدَ اللّٰهِ خَالِصَةً مِّنْ دُوْنِ النَّاسِ فَتَمَنَّوُا الْمَوْتَ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٩٤﴾

९५) तर आफ्ना अधिका कार्यहरू हेरेर तिनीहरू कदापि मृत्युको कामना गर्दैनन् । अल्लाह अत्याचारीहरूलाई राम्रोसंग जान्दछ ।

وَلَنْ يَّتَمَنَّوْهُ اَبَدًاۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ ؕ وَاللّٰهُ عَلِيْمٌۢ بِالظّٰلِمِيْنَ ﴿٩٥﴾

९६) बरु हे नबी ! तिनीहरू सब भन्दा बढी जीवनप्रति मोह राख्नेहरू हुन् । र यो मोह तिनीहरूमा अल्लाहसँग अरुको साझेदारी ठहराउनेहरू भन्दा पनि बढी हुन्छ । तिनीहरू मध्ये हरेकले एक-एक हजार

وَلَتَجِدَنَّهُمْ اَحْرَصَ النَّاسِ عَلٰى حَيٰوةٍ ۚ وَمِنَ الَّذِيْنَ اَشْرَكُوْا ۚ يَوَدُّ اَحَدُهُمْ لَوْ يُعَمَّرُ اَلْفَ سَنَةٍ ۚ وَمَا هُوَ بِمُزَحْزِحِهٖ مِنَ الْعَذَابِ اَنْ يُّعَمَّرَ ؕ وَاللّٰهُ بَصِيْرٌۢ بِمَا يَعْمَلُوْنَ ﴿٩٦﴾

वर्षसम्म बाँच्ने इच्छा राख्दछ । तर यो लामो उमेरले पनि तिनलाई सजायबाट मुक्त गराउन सक्दैन, र जुन काम यिनीहरू गर्दछन् त्यसलाई अल्लाहले राम्रोसित देखिरहेको छ ।

قُلْ مَنْ كَانَ عَدُوًّا لِّجِبْرِيْلَ فَاِنَّهٗ نَزَّلَهٗ عَلٰى قَلْبِكَ بِاِذْنِ اللّٰهِ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ وَهُدًى وَّبُشْرٰى لِلْمُؤْمِنِيْنَ ﴿٩٧﴾

९७) (हे मुहम्मद (स.अ.) भनिदिनु : कि जो जिब्राइलको शत्रु हो, जसले अल्लाहको सन्देशलाई उसको आदेशानुसार तपाईको हृदयमा उतारेको हो, जुन सन्देशले उनीहरूको (अघिका) ग्रन्थहरूलाई प्रमाणित गर्दछ र आस्थावानहरूका निम्ति मार्ग दर्शक र शुभ सन्देश हो । (त अल्लाह पनि तिनीहरूको शत्रु हो)

مَنْ كَانَ عَدُوًّا لِّلّٰهِ وَمَلٰٓئِكَتِهٖ وَرُسُلِهٖ وَجِبْرِيْلَ وَمِيْكٰلَ فَاِنَّ اللّٰهَ عَدُوٌّ لِّلْكٰفِرِيْنَ ﴿٩٨﴾

९८) (हे पैगम्बर !) जुन व्यक्ति अल्लाहको र उसका दूतहरूको, र जिब्राईल र मिकाईलको शत्रु हो र त्यस्ता नास्तिकहरूको अल्लाह स्वयम् दुश्मन हो ।

وَلَقَدْ اَنْزَلْنَآ اِلَيْكَ اٰيٰتٍۢ بَيِّنٰتٍ ۚ وَمَا يَكْفُرُ بِهَآ اِلَّا الْفٰسِقُوْنَ ﴿٩٩﴾

९९) र, नि:सदेह हामीले तपाईको नजिकमा ठोस तर्कहरू पठाएका छौं जसलाई पापीहरू बाहेक अरु कोही नकार्न सक्दैन ।

اَوَكُلَّمَا عٰهَدُوْا عَهْدًا نَّبَذَهٗ فَرِيْقٌ مِّنْهُمْ ۭ بَلْ اَكْثَرُهُمْ لَا يُؤْمِنُوْنَ ﴿١٠٠﴾

१००) तिनीहरूले जब-जब कुनै वाचा गर्दछन् तब-तब तिनीहरूमध्ये एक वा अर्को समूहले त्यसलाई भङ्ग गरिदिन्छ । वास्तविकता यो हो कि

तिनीहरूमध्ये धेरैजसो आस्था नभएका हुन् ।

وَلَمَّا جَاءَهُمْ رَسُولٌ مِّنْ عِندِ اللَّهِ مُصَدِّقٌ لِّمَا مَعَهُمْ نَبَذَ فَرِيقٌ مِّنَ الَّذِينَ أُوتُوا الْكِتَابَ كِتَابَ اللَّهِ وَرَاءَ ظُهُورِهِمْ كَأَنَّهُمْ لَا يَعْلَمُونَ ﴿١٠١﴾

१०१) तिनीहरूतिर जहिलेसुकै अल्लाहबाट कुनै पैगम्बर तिनीहरूको ग्रन्थको पुष्टि गर्ने गरी आयो, त ग्रन्थ मान्नेहरूको एउटा समूहले अल्लाहको किताबतिर यसरी पिठ्यूँ पछाडि फर्कायो, कि मानौं तिनीहरूलाई केही थाहा नै थिएन ।

وَاتَّبَعُوا مَا تَتْلُو الشَّيَاطِينُ عَلَىٰ مُلْكِ سُلَيْمَانَ ۖ وَمَا كَفَرَ سُلَيْمَانُ وَلَٰكِنَّ الشَّيَاطِينَ كَفَرُوا يُعَلِّمُونَ النَّاسَ السِّحْرَ وَمَا أُنزِلَ عَلَى الْمَلَكَيْنِ بِبَابِلَ هَارُوتَ وَمَارُوتَ ۚ وَمَا يُعَلِّمَانِ مِنْ أَحَدٍ حَتَّىٰ يَقُولَا إِنَّمَا نَحْنُ فِتْنَةٌ فَلَا تَكْفُرْ ۖ فَيَتَعَلَّمُونَ مِنْهُمَا مَا يُفَرِّقُونَ بِهِ بَيْنَ الْمَرْءِ وَزَوْجِهِ ۚ وَمَا هُم بِضَارِّينَ بِهِ مِنْ أَحَدٍ إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَيَتَعَلَّمُونَ مَا يَضُرُّهُمْ وَلَا يَنفَعُهُمْ ۚ وَلَقَدْ عَلِمُوا لَمَنِ اشْتَرَاهُ مَا لَهُ فِي الْآخِرَةِ مِنْ خَلَاقٍ ۚ وَلَبِئْسَ مَا شَرَوْا بِهِ أَنفُسَهُمْ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ﴿١٠٢﴾

१०२) र त्यस चीजको पछि लागे जसलाई सुलैमानको राज्यकालमा शैतानहरूले पढ्ने गर्दथे । तर सुलैमानले बिल्कुलै कुफ्र गरेनन् बरु शैतानहरूले नै कुफ्र गर्दथे, तिनीहरूले मानिसहरूलाई जादू सिकाउँदथे जुन "बाबुल" शहरमा दुई जना फरिश्ता (अर्थात) हारुत र मारुत माथि उतरेको थियो । ती दुवैले पनि कसैलाई तबसम्म केही सिकाउन्नथे जबसम्म यो भन्दैन्थे कि हामी त एउटा परिक्षणमा छौं, तिमी कुफ्रमा न लाग । फेरि पनि मानिसहरूले तिनीहरूसित यस्तो (जादू) सिक्दथे जसबाट पति-पत्नीबीच सम्बन्ध-बिच्छेद भइहालोस् र वास्तवमा अल्लाहको इच्छा न भई, तिनीहरूले त्यसबाट कसैको केही बिगार्न सक्दैनन् । र यिनीहरूले यस्ता (मन्त्र) सिक्दथे जसले तिनलाई हानि पुऱ्याओस् र

लाभ पुऱ्याउन नसकोस् । र तिनीहरू विश्वासका साथ जान्दछन् कि यस्ता कुराहरू लिनेहरूको परलोकमा केही अंश हुँदैन र त्यो निकृष्ट चीज हो जसको बदलामा तिनीहरूले आफ्ना ज्यान बेचिहाले । कति राम्रो हुन्थ्यो, यदि तिनीहरू यो कुरो जानेको भए ।

وَلَوْ أَنَّهُمْ آمَنُوا وَاتَّقَوْا لَمَثُوبَةٌ مِّنْ عِندِ
اللَّهِ خَيْرٌ ۖ لَّوْ كَانُوا يَعْلَمُونَ ﴿١٠٣﴾

१०३) यदि तिनीहरू आस्थावान र संयमी बन्न सकेको भए अल्लाहको तर्फबाट तिनीहरूलाई सर्वोत्तम प्रतिफल मिल्ने थियो । यदि तिनीहरूलाई ज्ञान भएको भए ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَقُولُوا رَاعِنَا
وَقُولُوا انظُرْنَا وَاسْمَعُوا ۗ وَلِلْكَافِرِينَ
عَذَابٌ أَلِيمٌ ﴿١٠٤﴾

१०४) हे आस्थावानहरू ! तिमीहरू अल्लाहको पैगम्बरको (लागि) ''राएना'' नभन बरु ''उन्जुर्ना'' भन अर्थात हाम्रो तर्फ हेर्दै र सुन्दै गर्नु र काफिरहरूको लागि कष्टदायक सजाय छ ।

مَّا يَوَدُّ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ وَلَا
الْمُشْرِكِينَ أَن يُنَزَّلَ عَلَيْكُم مِّنْ خَيْرٍ مِّن
رَّبِّكُمْ ۗ وَاللَّهُ يَخْتَصُّ بِرَحْمَتِهِ مَن يَشَاءُ ۚ
وَاللَّهُ ذُو الْفَضْلِ الْعَظِيمِ ﴿١٠٥﴾

१०५) न त अहले किताबका काफिरहरू र न त ''मुशिरक''हरू चाहन्छन् कि तिमी माथि पालनकर्ताबाट कुनै राम्रो कुरा उत्रोस्, तर अल्लाहले जसलाई रुचाउँछ, आफ्नो विशेष दयाको पात्र बनाउँछ र अल्लाह ठूलो कृपाको स्वामी छ ।

مَا نَنسَخْ مِنْ آيَةٍ أَوْ نُنسِهَا نَأْتِ بِخَيْرٍ مِّنْهَا أَوْ
مِثْلِهَا ۗ أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٠٦﴾

१०६) हामी जुन आयतलाई (श्लोक) रद्द गरिदिन्छौं वा त्यसलाई बिर्सिदिन्छौं । त्यो भन्दा राम्रो वा त्यस्तै अन्य

आयतहरू ल्याउँछौं । के तिमीलाई थाहा छैन कि अल्लाह प्रत्येक कुरामाथि सर्वशक्तिमान छ?

१०७) के तिमीलाई थाहा छैन कि आकाशहरू र पृथ्वीको स्वामी अल्लाह नै हो र अल्लाह बाहेक तिम्रो कोही मित्र र सहायता प्रदान गर्ने वाला छैन ?

أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۗ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١٠٧﴾

१०८) के तिमी आफ्ना रसुलबाट त्यही सोध्न चाहन्छौ । जुन यस भन्दा पहिला मूसासंग सोधिएको थियो ?। र जुन व्यक्तिले ईमानको सट्टा कुफ्र ग्रहण गऱ्यो त्यो सोझो बाटोबाट विचलित भइहाल्यो ।

أَمْ تُرِيدُونَ أَن تَسْأَلُوا رَسُولَكُمْ كَمَا سُئِلَ مُوسَىٰ مِن قَبْلُ ۗ وَمَن يَتَبَدَّلِ الْكُفْرَ بِالْإِيمَانِ فَقَدْ ضَلَّ سَوَاءَ السَّبِيلِ ﴿١٠٨﴾

१०९) धेरै जसो अहले किताबहरू(यहुदी ईसाईले) सत्य प्रकट भई सकेपछि पनि आफ्ना हृदयमा ईर्ष्या भएको कारण तिमीलाई पनि ईमानबाट विचलित गराउन चाहन्छन् । तिमी पनि क्षमा गर र बेवास्ता गरिदेऊ, यहाँसम्म कि अल्लाहले आफ्नो (अर्को) आदेश पठाओस्, निःसन्देह अल्लाह हरेक कुरामाथि सामर्थवान छ ।

وَدَّ كَثِيرٌ مِّنْ أَهْلِ الْكِتَابِ لَوْ يَرُدُّونَكُم مِّن بَعْدِ إِيمَانِكُمْ كُفَّارًا حَسَدًا مِّنْ عِندِ أَنفُسِهِم مِّن بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْحَقُّ ۖ فَاعْفُوا وَاصْفَحُوا حَتَّىٰ يَأْتِيَ اللَّهُ بِأَمْرِهِ ۗ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٠٩﴾

११०) नमाज पढ्दै गर र जकात दिँदै गर र जुन सत्यकर्म आफ्नो लागि अगाडि पठाउनेछौ, ती सबै अल्लाह कहाँ पाउने छौ, कुनै सन्देह छैन कि अल्लाह तिम्रा

وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ ۚ وَمَا تُقَدِّمُوا لِأَنفُسِكُم مِّنْ خَيْرٍ تَجِدُوهُ عِندَ اللَّهِ ۗ إِنَّ اللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١٠﴾

क्रियाकलापहरूलाई हेरिराखेको छ ।

१११) यिनीहरू भन्दछन् कि यहूदी र ईसाईहरू बाहेक अरु कोही स्वर्गमा जाने छैन । यी यिनीहरूका कल्पना मात्र हुन् । (हे पैगम्बर !) यिनीहरूलाई भनी दिनु कि यदि (तिमी) सत्य छौ भने कुनै प्रमाण त पेश गर ।

وَقَالُوْا لَنْ يَّدْخُلَ الْجَنَّةَ اِلَّا مَنْ كَانَ هُوْدًا اَوْ نَصٰرٰى ؕ تِلْكَ اَمَانِيُّهُمْ ؕ قُلْ هَاتُوْا بُرْهَانَكُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١١١﴾

११२) सुन ! जो पनि अल्लाहको अगाडि असल नीयतले आफ्नो टाउको निहुराउँनेछ त निःसन्देह उसलाई त्यसको पुरस्कार उसको पालनकर्ताले दिनेछ । उसको लागि न कुनै प्रकारको भय रहनेछ, न दुःख र उदासी ।

بَلٰى ۚ مَنْ اَسْلَمَ وَجْهَهٗ لِلّٰهِ وَهُوَ مُحْسِنٌ فَلَهٗۤ اَجْرُهٗ عِنْدَ رَبِّهٖ ۪ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿١١٢﴾

११३) यहूदीहरू भन्दछन् कि ईसाईहरू सत्य बाटोमा छैनन् र ईसाईहरू भन्दछन् कि यहूदीहरू सत्य मार्गमा छैनन्, जबकी यिनीहरू तौरेत पढ्छन् । यसरी नै ठीक यस्तै कुरा अज्ञानीहरूले पनि गर्दछन् । अल्लाहले कि़यामतको दिन तिनीहरूको यस विवादको फैसला तिनीहरू बीच गर्ने छ ।

وَقَالَتِ الْيَهُوْدُ لَيْسَتِ النَّصٰرٰى عَلٰى شَيْءٍ ۪ وَّقَالَتِ النَّصٰرٰى لَيْسَتِ الْيَهُوْدُ عَلٰى شَيْءٍ ۙ وَّهُمْ يَتْلُوْنَ الْكِتٰبَ ؕ كَذٰلِكَ قَالَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ مِثْلَ قَوْلِهِمْ ۚ فَاللّٰهُ يَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيٰمَةِ فِيْمَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿١١٣﴾

११४) त्यो भन्दा ठूलो अन्यायीको हुनसक्छ जसले अल्लाहका मस्जिदहरूमा अल्लाहकै नामको चर्चा गर्न मनाही गर्दछ र तिनलाई बरबाद बनाउने प्रयास गर्दछ ? त्यस्ता मानिसले

وَمَنْ اَظْلَمُ مِمَّنْ مَّنَعَ مَسٰجِدَ اللّٰهِ اَنْ يُّذْكَرَ فِيْهَا اسْمُهٗ وَسَعٰى فِيْ خَرَابِهَا ؕ اُولٰٓئِكَ مَا كَانَ لَهُمْ اَنْ يَّدْخُلُوْهَاۤ اِلَّا خَآئِفِيْنَ ؕ لَهُمْ فِي الدُّنْيَا خِزْيٌ وَّلَهُمْ فِي الْاٰخِرَةِ عَذَابٌ عَظِيْمٌ ﴿١١٤﴾

डर मान्दै त्यसमा लाग्नु पर्छ । तिनीहरूका लागि संसारमा अपमान र आखिरतमा ठूलो सजाय छ ।

११५) पूर्व र पश्चिमको स्वामी अल्लाह नै हो । तिमी जतातिर फर्के पनि अल्लाहको अनुहारलाई पाउने छौ । निःसन्देह अल्लाह सर्वव्यापी, सर्वत्र र सर्व ज्ञानी छ ।

وَلِلّٰهِ الْمَشْرِقُ وَالْمَغْرِبُ ۚ فَاَيْنَمَا تُوَلُّوْا فَثَمَّ وَجْهُ اللّٰهِ ؕ اِنَّ اللّٰهَ وَاسِعٌ عَلِيْمٌ ﴿۱۱۵﴾

११६) यिनीहरू भन्दछन् कि अल्लाहका सन्तान छन् । (होइन) बरु अल्लाह पवित्र छ, आकाश र जमिनका सबै सृजनाहरू उसैका सम्पत्ति हुन् र प्रत्येक उसैको आज्ञाकारी छन् ।

وَقَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا ۙ سُبْحٰنَهٗ ؕ بَلْ لَّهٗ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ؕ كُلٌّ لَّهٗ قٰنِتُوْنَ ﴿۱۱۶﴾

११७) ऊ आकाशहरू र जमिनको स्रष्टा हो । जब कुनै काम गर्न चाहन्छ तब त्यसलाई आदेश दिन्छ कि भइहाल, अनि त्यो भइहाल्छ ।

بَدِيْعُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَاِذَا قَضٰۤى اَمْرًا فَاِنَّمَا يَقُوْلُ لَهٗ كُنْ فَيَكُوْنُ ﴿۱۱۷﴾

११८) यस्तै नबुझ्ने मानिसहरू भन्दछन् कि अल्लाह हामीसँग वार्तालाप, किन गर्दैन अथवा हाम्रो लागि कुनै चिनो किन आउँदैन ? यस्तै यस प्रकारको कुरा उनी भन्दा अघिकाले पनि गरेका थिए । उनीहरूका र यिनीहरूका हृदयहरू एक जस्ता भइ सके र हामीले त आस्थावानहरूका लागि चिनोको वर्णन गरिसकेका छौं ।

وَقَالَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ لَوْلَا يُكَلِّمُنَا اللّٰهُ اَوْ تَاْتِيْنَاۤ اٰيَةٌ ؕ كَذٰلِكَ قَالَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ مِّثْلَ قَوْلِهِمْ ؕ تَشَابَهَتْ قُلُوْبُهُمْ ؕ قَدْ بَيَّنَّا الْاٰيٰتِ لِقَوْمٍ يُّوْقِنُوْنَ ﴿۱۱۸﴾

११९) (हे मुहम्मद !) हामीले तपाईलाई सत्यको साथमा शुभ सन्देश

اِنَّاۤ اَرْسَلْنٰكَ بِالْحَقِّ بَشِيْرًا وَّنَذِيْرًا ۙ وَّلَا تُسْـَٔلُ عَنْ اَصْحٰبِ الْجَحِيْمِ ﴿۱۱۹﴾

सुनाउने र डर देखाउने वाला बनाएर पठाएका छौं र नर्कमा जानेहरूको सम्बन्धमा तपाईसँग केही जवाफदेही हुने छैन ।

وَلَنۡ تَرۡضٰى عَنۡكَ الۡيَهُوۡدُ وَلَا النَّصٰرٰى حَتّٰى تَتَّبِعَ مِلَّتَهُمۡ‌ؕ قُلۡ اِنَّ هُدَى اللّٰهِ هُوَ الۡهُدٰى‌ؕ وَلَئِنِ اتَّبَعۡتَ اَهۡوَآءَهُمۡ بَعۡدَ الَّذِىۡ جَآءَكَ مِنَ الۡعِلۡمِ‌ۙ مَا لَكَ مِنَ اللّٰهِ مِنۡ وَّلِىٍّ وَّلَا نَصِيۡرٍ ﴿۱۲۰﴾

१२०) तपाईसँग यहूदी र ईसाई कहिले पनि सहमत हुने छैनन्, जबसम्म तपाई तिनीहरूको धर्मको अनुयायी बन्नु हुन्न । (हे पैगम्बर !) भनिदिनु कि अल्लाहको मार्गदर्शन नै मार्ग दर्शन हो र तपाईसंग ज्ञान आइसके पछि पनि यदि तपाईले उनीहरूको इच्छाको वकालत गर्नुभयो भने अल्लाहसंग तिम्रो न कुनै पक्षधर हुनेछ न कोही सहायता गर्नेवाला ।

اَلَّذِيۡنَ اٰتَيۡنٰهُمُ الۡكِتٰبَ يَتۡلُوۡنَهٗ حَقَّ تِلَاوَتِهٖ ؕ اُولٰٓئِكَ يُؤۡمِنُوۡنَ بِهٖ ‌ؕ وَمَنۡ يَّكۡفُرۡ بِهٖ فَاُولٰٓئِكَ هُمُ الۡخٰسِرُوۡنَ ﴿۱۲۱﴾

१२१) जसलाई हामीले किताब प्रदान गरेका छौं र उनीहरूले त्यसलाई निष्ठाका साथ पढ्छन् भने उनीहरू यस किताबमाथि पनि आस्था राख्दछन् र जो यसको अवज्ञा गर्दछ ऊ नोक्सान उठाउने छ ।

يٰبَنِىۡٓ اِسۡرَآءِيۡلَ اذۡكُرُوۡا نِعۡمَتِىَ الَّتِىۡٓ اَنۡعَمۡتُ عَلَيۡكُمۡ وَاَنِّىۡ فَضَّلۡتُكُمۡ عَلَى الۡعٰلَمِيۡنَ ﴿۱۲۲﴾

१२२) हे इस्राईलको सन्तति ! मेरा ती उपकारहरू स्मरण गर, जुन कि मैले तिमीलाई प्रदान गरेको छु, मैले त तिमीलाई सबै विश्वमाथि श्रेष्ठता प्रदान गरें ।

وَاتَّقُوۡا يَوۡمًا لَّا تَجۡزِىۡ نَفۡسٌ عَنۡ نَّفۡسٍ شَيۡـئًا وَّلَا يُقۡبَلُ مِنۡهَا عَدۡلٌ وَّلَا تَنۡفَعُهَا شَفَاعَةٌ وَّلَا هُمۡ يُنۡصَرُوۡنَ ﴿۱۲۳﴾

१२३) त्यस दिनसित भयभीत होउ जुन दिन कुनै प्राणी अर्को प्राणीलाई कुनै फाइदा पुऱ्याउन सक्ने छैन न

कसैबाट कुनै बदला स्वीकार्ने छ र उसको सम्बन्धमा कुनै सिफारिश पनि स्वीकार्ने छैन र कुनै मद्दत प्राप्त हुनेछैन ।

وَإِذِ ابْتَلَىٰٓ إِبْرٰهٖمَ رَبُّهٗ بِكَلِمٰتٍ فَأَتَمَّهُنَّ ۖ قَالَ إِنِّي جَاعِلُكَ لِلنَّاسِ إِمَامًا ۖ قَالَ وَمِنْ ذُرِّيَّتِي ۖ قَالَ لَا يَنَالُ عَهْدِي الظّٰلِمِينَ ﴿١٢٤﴾

१२४) जब पालनहारले अनेक कुराहरूबाट इब्राहीमको परीक्षा लियो र उनी ती सबैमा उत्तीर्ण भए । त अल्लाहले भन्यो कि म तिमीलाई संसारभरिका मानिसहरूको पथ प्रदर्शक बनाउनेछु । उनले भने कि (पालनकर्ता) मेरा सन्ततिलाई पनि, अल्लाहले भन्नु भयो, हाम्रो वाचा अन्यायीहरूका लागि हुनेछैन ।

وَإِذْ جَعَلْنَا الْبَيْتَ مَثَابَةً لِّلنَّاسِ وَأَمْنًا ۖ وَاتَّخِذُوا مِنْ مَّقَامِ إِبْرٰهٖمَ مُصَلًّى ۖ وَعَهِدْنَآ إِلَىٰٓ إِبْرٰهٖمَ وَإِسْمٰعِيلَ أَنْ طَهِّرَا بَيْتِيَ لِلطَّآئِفِينَ وَالْعٰكِفِينَ وَالرُّكَّعِ السُّجُودِ ﴿١٢٥﴾

१२५) र हामीले खान-ए-कअ्बा-लाई मानिसहरूका पुण्य र शान्तिको ठाउँ बनायौं, तपाईले इब्राहीम उभेको स्थानलाई नमाज पढ्ने ठाउँ बनाउनु । र हामीले इब्राहीम तथा इस्माईलबाट वाचा लियौं कि तिमीहरू मेरो घर (कअ्बा)लाई परिक्रमा गर्ने, र रुकूअ् र सजदा गर्नेहरूको निम्ति सफा र पवित्र राख्ने गर ।

وَإِذْ قَالَ إِبْرٰهٖمُ رَبِّ اجْعَلْ هٰذَا بَلَدًا اٰمِنًا وَّارْزُقْ أَهْلَهٗ مِنَ الثَّمَرٰتِ مَنْ اٰمَنَ مِنْهُمْ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۖ قَالَ وَمَنْ كَفَرَ فَأُمَتِّعُهٗ قَلِيلًا ثُمَّ أَضْطَرُّهٗٓ إِلَىٰ عَذَابِ النَّارِ ۖ وَبِئْسَ الْمَصِيرُ ﴿١٢٦﴾

१२६) र जब इब्राहीमले प्रार्थना गरे कि हे पालनहार ! यस ठाउँलाई शान्तिको नगर बनाई देऊ र यसका वासिन्दाहरू जो अल्लाहमाथि र आखिरतको दिनमाथि आस्था राख्ने छन्, तिनीहरूलाई खानको निम्ति

फलफूलको आहार प्रदान गर, तब अल्लाहले भन्यो कि मैले अनास्थावानहरूलाई पनि केही लाभ प्रदान गर्नेछु, फेरि तिनलाई आगोको सजाय भोग्नका लागि विवश गरिदिन्छु, जानुपर्ने यो अत्यन्त नराम्रो ठाउँ हो ।

وَإِذْ يَرْفَعُ إِبْرَٰهِـۧمُ ٱلْقَوَاعِدَ مِنَ ٱلْبَيْتِ وَإِسْمَـٰعِيلُ رَبَّنَا تَقَبَّلْ مِنَّآ ۖ إِنَّكَ أَنتَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴿١٢٧﴾

१२७) इब्राहीम र इस्माईल कअ्बाको जग र पर्खाल उठाउँदै जानु हुन्थ्यो र प्रार्थना गर्दै जानु हुन्थ्यो कि हे पालनहार ! हामीबाट यो सेवा स्वीकार गर । निःसन्देह तिमी नै सबै सुन्ने र जान्ने वाला हौ ।

رَبَّنَا وَٱجْعَلْنَا مُسْلِمَيْنِ لَكَ وَمِن ذُرِّيَّتِنَآ أُمَّةً مُّسْلِمَةً لَّكَ وَأَرِنَا مَنَاسِكَنَا وَتُبْ عَلَيْنَآ ۖ إِنَّكَ أَنتَ ٱلتَّوَّابُ ٱلرَّحِيمُ ﴿١٢٨﴾

१२८) हे हाम्रो पालनहार ! हामीलाई आफ्नो आज्ञा पालक बनाईराख र हाम्रा सन्तति मध्येबाट एउटा समूहलाई पनि आफ्नो ताबेअ्दार बनाइ राख र हामीलाई आफ्नो पूजा गर्ने तरिका सिकाउ र हाम्रो तौबा स्वीकार गर । निःसन्देह तिमी क्षमा दिने दयावान र कृपालु हो ।

رَبَّنَا وَٱبْعَثْ فِيهِمْ رَسُولًا مِّنْهُمْ يَتْلُوا۟ عَلَيْهِمْ ءَايَـٰتِكَ وَيُعَلِّمُهُمُ ٱلْكِتَـٰبَ وَٱلْحِكْمَةَ وَيُزَكِّيهِمْ ۚ إِنَّكَ أَنتَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿١٢٩﴾

१२९) हे हाम्रो पालनहार ! यिनीहरूका निम्ति यिनै मध्येबाट पैगम्बर पठाउनु जसले उनीहरूलाई तिम्रा आयतहरू पढेर सुनाओस्, र यिनलाई किताब र कौशल सिकाउँदै गरोस् र यिनीहरूका (हृदयलाई) पवित्र गर्दै गरोस् । निःसन्देह तिमी अपार शक्तिशाली र अति तत्वदर्शी हौ ।

وَمَنْ يَّرْغَبُ عَنْ مِّلَّةِ اِبْرٰهٖمَ اِلَّا مَنْ سَفِهَ نَفْسَهٗ ؕ وَلَقَدِ اصْطَفَيْنٰهُ فِى الدُّنْيَا ۚ وَاِنَّهٗ فِى الْاٰخِرَةِ لَمِنَ الصّٰلِحِيْنَ ﴿۱۳۰﴾

१३०) बुद्धिहीन बाहेक इब्राहीमको धर्मबाट कोही विमुख हुनसक्दैन ? र हामीले उनलाई संसारमा पनि रोज्यौं र आखिरतमा पनि उनी सत्कर्म गर्नेहरूमा हुनेछन् ।

اِذْ قَالَ لَهٗ رَبُّهٗٓ اَسْلِمْ ۙ قَالَ اَسْلَمْتُ لِرَبِّ الْعٰلَمِيْنَ ﴿۱۳۱﴾

१३१) जब उनीसित उनको पालनकर्ताले भन्यो कि आज्ञाकारी बन, तब उनले भने कि म सारा संसारहरूको पालनकर्ता अगाडि नतमस्तक हुन्छु ।

وَوَصّٰى بِهَآ اِبْرٰهٖمُ بَنِيْهِ وَيَعْقُوْبُ ؕ يٰبَنِىَّ اِنَّ اللّٰهَ اصْطَفٰى لَكُمُ الدِّيْنَ فَلَا تَمُوْتُنَّ اِلَّا وَاَنْتُمْ مُّسْلِمُوْنَ ﴿۱۳۲﴾ؕ

१३२) इब्राहीमले र याकूबले आफ्ना सन्ततिहरूलाई यस्तै उपदेश दिए, कि हाम्रा सन्ततिहरू हो ! अल्लाहले तिम्रा निम्ति यही धर्म रोजेको हो । तसर्थ मर्नु त मुसलमान भएर नै मर्नु ।

اَمْ كُنْتُمْ شُهَدَآءَ اِذْ حَضَرَ يَعْقُوْبَ الْمَوْتُ ۙ اِذْ قَالَ لِبَنِيْهِ مَا تَعْبُدُوْنَ مِنْۢ بَعْدِىْ ؕ قَالُوْا نَعْبُدُ اِلٰهَكَ وَاِلٰهَ اٰبَآئِكَ اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ اِلٰهًا وَّاحِدًا ۚۖ وَّنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿۱۳۳﴾

१३३) के याकूब परलोक हुने बेला तिमी त्यहाँ उपस्थित थियौ ? जब उनले आफ्ना सन्तानहरूसित सोधे कि म पछि तिमीहरू कसको भक्ति गर्नेछौं, तब तिनीहरूले भने कि तपाईको पालनहार, र तपाईका पुर्खा, इब्राहीम र इस्माईल र इस्हाकका पलनहारको भक्ति गर्नेछौं, जो एउटै छ र हामी उसैका आज्ञाकारी रहने छौं ।

تِلْكَ اُمَّةٌ قَدْ خَلَتْ ۚ لَهَا مَا كَسَبَتْ وَلَكُمْ مَّا كَسَبْتُمْ ۚ وَلَا تُسْـَٔلُوْنَ عَمَّا كَانُوْا يَعْمَلُوْنَ ﴿۱۳۴﴾

१३४) यो पुस्ता बितिसक्यो, तिनीहरू आफ्ना कर्मका भागी छन् र तिमी आफ्ना कर्मका, र जुन कर्म उनले गरे त्यसको सोधपूछ तिमीसित हुने छैन ।

وَقَالُوْا كُوْنُوْا هُوْدًا اَوْ نَصٰرٰى تَهْتَدُوْا ؕ قُلْ بَلْ مِلَّةَ اِبْرٰهٖمَ حَنِيْفًا ؕ وَمَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿١٣٥﴾

१३५) यिनीहरू (यहूदी र ईसाईहरू) भन्दछन् कि यहूदी अथवा ईसाई भईहाल, अनि सहीमार्ग पाउने छौ । (हे पैगम्बर !) भनिदिनु, बरु इब्राहीमको धर्म मान्नेहरू सही मार्गमा छन् र इब्राहीम अल्लाहका सच्चा अनुयायी थिए र मुश्रिकहरू मध्येका थिएनन् ।

قُوْلُوْٓا اٰمَنَّا بِاللّٰهِ وَمَآ اُنْزِلَ اِلَيْنَا وَمَآ اُنْزِلَ اِلٰٓى اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَمَآ اُوْتِيَ مُوْسٰى وَعِيْسٰى وَمَآ اُوْتِيَ النَّبِيُّوْنَ مِنْ رَّبِّهِمْ ۚ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ مِّنْهُمْ ۫ وَنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿١٣٦﴾

१३६) हे मुस्लिमहरू! तिमीहरू सबैले भनिदेऊ कि हामी अल्लाहमाथि, र जुन किताब हामी तिर उतारियो, र जुन (ग्रन्थहरू) इब्राहीम, इस्माईल, इस्हाक़, याकूब र उनका सन्ततिहरूलाई प्रदान गरियो, तिनी माथि र जुन मूसा र ईसालाई प्रदान गरियो र जुन अन्य पैगम्बरहरूलाई तिनका पालनकर्ताबाट प्रदान गरिए, तिनीमाथि सम्पूर्ण आस्था राख्दछौं । हामीले ती पैगम्बहरूमा कुनै भेदभाव गर्दैनौं र हामी उही एक अल्लाहका आदेश पालन गर्नेहरू हौं ।

فَاِنْ اٰمَنُوْا بِمِثْلِ مَآ اٰمَنْتُمْ بِهٖ فَقَدِ اهْتَدَوْا ۚ وَاِنْ تَوَلَّوْا فَاِنَّمَا هُمْ فِيْ شِقَاقٍ ۚ فَسَيَكْفِيْكَهُمُ اللّٰهُ ۚ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿١٣٧﴾

१३७) यदि तिनीहरू पनि तिमी जस्तै आस्था राखे भने सही मार्ग पाउने छन् । र यदि विमुख हुन्छन् भने तिनी (तिम्रा) विरोधीहरू हुन् र तिनको दाँजोमा तिमीलाई अल्लाह नै पर्याप्त छ र ऊ सबै सुन्ने जान्नेवाला हो ।

صِبْغَةَ اللّٰهِ ۚ وَمَنْ اَحْسَنُ مِنَ اللّٰهِ صِبْغَةً ۫
وَّنَحْنُ لَهٗ عٰبِدُوْنَ ﴿١٣٨﴾

१३८) अल्लाहको रङ्ग ग्रहण गर्नु र अल्लाहको रङ्ग भन्दा उत्तम रङ्ग कसको हुन सक्दछ ? हामी त उसैको पूजारी हौं ।

قُلْ اَتُحَآجُّوْنَنَا فِى اللّٰهِ وَهُوَ رَبُّنَا وَرَبُّكُمْ ۚ وَلَنَآ
اَعْمَالُنَا وَلَكُمْ اَعْمَالُكُمْ ۚ وَنَحْنُ لَهٗ مُخْلِصُوْنَ ﴿١٣٩﴾

१३९) तपाईले भनि दिनुस्, के तिमी अल्लाहको सम्बन्धमा हामीसँग झगडा गर्दछौं, जो हाम्रो र तिम्रो पालनकर्ता हो । हामीलाई हाम्रो कर्मको र तिमीलाई तिम्रो कर्मको फल प्राप्त हुनेछ, र हामी त उसैको उपासक हौं ।

اَمْ تَقُوْلُوْنَ اِنَّ اِبْرٰهٖمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ
وَيَعْقُوْبَ وَالْاَسْبَاطَ كَانُوْا هُوْدًا اَوْ نَصٰرٰى ؕ قُلْ
ءَاَنْتُمْ اَعْلَمُ اَمِ اللّٰهُ ؕ وَمَنْ اَظْلَمُ مِمَّنْ كَتَمَ
شَهَادَةً عِنْدَهٗ مِنَ اللّٰهِ ؕ وَمَا اللّٰهُ بِغَافِلٍ
عَمَّا تَعْمَلُوْنَ ﴿١٤٠﴾

१४०) (हे यहूदी र ईसाई !) के तिमी यो भन्दछौ कि इब्राहीम, इस्माईल, इस्हाक, याकूब र तिनका सन्तति यहूदी या ईसाई थिए ? (हे मुहम्मद ! तिनीहरूसित) भनि दिनुस्, के तिमीहरू धेरै ज्ञानी छौं, कि अल्लाह ? अल्लाहको नजिक प्रमाण लुकाउने भन्दा बढी अन्यायी को हुन सक्दछ ? र तिमीहरू जे गरिराखेका छौ, त्योसित अल्लाह असावधान छैन ।

تِلْكَ اُمَّةٌ قَدْ خَلَتْ ۚ لَهَا مَا كَسَبَتْ وَلَكُمْ مَّا
كَسَبْتُمْ ۚ وَلَا تُسْـَٔلُوْنَ عَمَّا كَانُوْا
يَعْمَلُوْنَ ﴿١٤١﴾

१४१) यो उम्मत (पिढी) बितिसकेको छ, तिनीहरूले जे गरे तिनीहरूका लागि छ र जे तिमीहरूले गरेको तिम्रो निम्ति छ, तिनीहरूको कामको सम्बन्धमा सोधपूछ तिमीसित हुनेछैन ।

سَيَقُوْلُ السُّفَهَآءُ مِنَ النَّاسِ مَا وَلّٰىهُمْ عَنْ
قِبْلَتِهِمُ الَّتِىْ كَانُوْا عَلَيْهَا ؕ قُلْ لِّلّٰهِ الْمَشْرِقُ

१४२) चाँडै मूर्खहरूले भन्नेछन् कि (मुसलमान) जुन किब्लासंग आबद्ध

थिए, (अहिले) त्यसबाट उनीहरूलाई कुन कुराले विमुख गराएको छ ? तपाई भनि दिनुस् कि, पूर्व र पश्चिम सबैको स्वामी अल्लाह हो । उसले जसलाई चाहन्छ, सही बाटोमा हिंड्ने मार्ग दर्शन दिन्छ ।

وَالْمَغْرِبُ ۚ يَهْدِي مَنْ يَشَاءُ إِلَىٰ صِرَاطٍ مُسْتَقِيمٍ ﴿١٤٢﴾

१४३) हामीले यस्तै तिमीलाई मध्यमार्गी समुदाय बनाएका हौं जसबाट अरु मानिसहरूका साक्षी बन र (मोहम्मद स.अ.) पैगम्बर तिम्रा लागि साक्षी बनुन् र जुन किब्लामा तिमी पहिला देखि लागेका थियौ, त्यसलाई हामीले यस कारण निर्धारित गरेका थियौं ताकि थाहा होस् कि, को (हाम्रो) पैगम्बरको सच्चा अनुयायी हो र को हो जो विचलित हुन्छ ? यो काम गाह्रो छ, तर जसलाई अल्लाहले मार्ग-दर्शित गरेको छ । (तिनीहरूलाई गाह्रो छैन) । र अल्लाहले तिम्रो आस्थालाई निरर्थक तुल्याउने छैन । अल्लाह त मानिसहरूसंग अत्यन्त कृपा र दयाको व्यवहार गर्नेवाला छ ।

وَكَذَٰلِكَ جَعَلْنَاكُمْ أُمَّةً وَسَطًا لِتَكُونُوا شُهَدَاءَ عَلَى النَّاسِ وَيَكُونَ الرَّسُولُ عَلَيْكُمْ شَهِيدًا ۗ وَمَا جَعَلْنَا الْقِبْلَةَ الَّتِي كُنْتَ عَلَيْهَا إِلَّا لِنَعْلَمَ مَنْ يَتَّبِعُ الرَّسُولَ مِمَّنْ يَنْقَلِبُ عَلَىٰ عَقِبَيْهِ ۚ وَإِنْ كَانَتْ لَكَبِيرَةً إِلَّا عَلَى الَّذِينَ هَدَى اللَّهُ ۗ وَمَا كَانَ اللَّهُ لِيُضِيعَ إِيمَانَكُمْ ۚ إِنَّ اللَّهَ بِالنَّاسِ لَرَءُوفٌ رَحِيمٌ ﴿١٤٣﴾

१४४) (हे मोहम्मद सः) मैले तपाईको मुख पटक-पटक आकाशतिर उठ्दै गरेको देख्दै छु । अब हामीले तपाईलाई यस किब्लातिर, ध्यानाकर्षण गराउँदैछौ जसबाट तपाई खुशी हुनु हुनेछ । तपाईले

قَدْ نَرَىٰ تَقَلُّبَ وَجْهِكَ فِي السَّمَاءِ ۖ فَلَنُوَلِّيَنَّكَ قِبْلَةً تَرْضَاهَا ۚ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۚ وَحَيْثُ مَا كُنْتُمْ فَوَلُّوا وُجُوهَكُمْ شَطْرَهُ ۗ وَإِنَّ الَّذِينَ أُوتُوا الْكِتَابَ لَيَعْلَمُونَ أَنَّهُ الْحَقُّ مِنْ رَبِّهِمْ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا يَعْمَلُونَ ﴿١٤٤﴾

आफ्नो मुख मस्जिदे हराम (अर्थात् खानए-कअ्बा) तिर फर्काउनुस् र तपाई जहाँ भए पनि (नमाज पढ्ने बेलामा) त्यही मस्जिद तर्फ आफ्ना अनुहार फर्काउने गर्नुस् । किताब मान्नेहरूलाई यो कुरा राम्ररी थाहा छ कि अल्लाह तर्फबाट योही नै सत्य हो । र जुन काम यिनीहरू गर्दछन्, त्यसबाट अल्लाह अनभिज्ञ छैन ।

وَلَئِنْ أَتَيْتَ الَّذِينَ أُوتُوا الْكِتَابَ بِكُلِّ آيَةٍ مَّا تَبِعُوا قِبْلَتَكَ ۚ وَمَا أَنتَ بِتَابِعٍ قِبْلَتَهُمْ ۚ وَمَا بَعْضُهُم بِتَابِعٍ قِبْلَةَ بَعْضٍ ۚ وَلَئِنِ اتَّبَعْتَ أَهْوَاءَهُم مِّن بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ ۙ إِنَّكَ إِذًا لَّمِنَ الظَّالِمِينَ ﴿١٤٥﴾

१४५) र यदि तपाईले ग्रन्थ प्रदान भएको सामु जति तर्कहरूराखे पनि तिनीहरूले (यहुदी र ईसाई) तपाईको किब्लालाई स्वीकार्ने छैनन् र न त तपाईले उनीहरूको किब्लालाई स्वीकार्ने हो र नत उनीहरू परस्परमा एक अर्काको किब्लालाई मान्ने छन् । र यदि तिमी आफ्नो छेउ ज्ञान आईसके पछि तिनीहरूको इच्छा अनुसार हिंड्छौ भने तिमी पनि अन्यायीहरू मध्येका हुनेछौ ।

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْرِفُونَهُ كَمَا يَعْرِفُونَ أَبْنَاءَهُمْ ۖ وَإِنَّ فَرِيقًا مِّنْهُمْ لَيَكْتُمُونَ الْحَقَّ وَهُمْ يَعْلَمُونَ ﴿١٤٦﴾

१४६) जसलाई हामीले ग्रन्थ प्रदान गरेका छौं, तिनीहरू त्यसलाई यसरी चिन्दछन्, जस्तो कि आफ्ना सन्तानहरूलाई चिन्ने गर्दछन्, (तर) यिनीमध्ये एउटा समूहले जानी-जानी सत्य कुरालाई लुकाई राख्दछन् ।

الْحَقُّ مِن رَّبِّكَ ۖ فَلَا تَكُونَنَّ مِنَ الْمُمْتَرِينَ ﴿١٤٧﴾

१४७) (हे पैगम्बर (स.), (यो नयाँ किब्ला) तपाईको पलनकर्ताबाट सत्य हो,

खबरदार तपाईले कहिल्यै पनि शंका गर्नेहरूमध्येको नहुनु ।

وَلِكُلٍّ وِّجْهَةٌ هُوَ مُوَلِّيهَا فَاسْتَبِقُوا الْخَيْرَاتِ ۚ أَيْنَ مَا تَكُونُوا يَأْتِ بِكُمُ اللَّهُ جَمِيعًا ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿١٤٨﴾

१४८) हरेक व्यक्ति कुनै न कुनै तर्फ लागि रहेको छ, तर तिमी सत्य कर्म तर्फ अघि बढ्ने गर । तिमीहरू जहाँ भएतापनि अल्लाहले तिमीलाई ल्याउने छ । (निःसन्देह) अल्लाह हरेक कुराको लागि सर्वशक्तिमान छ ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۖ وَإِنَّهُ لَلْحَقُّ مِن رَّبِّكَ ۗ وَمَا اللَّهُ بِغَافِلٍ عَمَّا تَعْمَلُونَ ﴿١٤٩﴾

१४९) तिमी जहाँबाट निस्कदा (नमाजमा) आफ्नो अनुहार मस्जिदे हराम तिर फर्काइहाल । निःसन्देह त्यो तिम्रो पालनहारबाट सत्य हो । र, तिमीहरू जेजति गर्दछौ, अल्लाह त्यसबाट अनभिज्ञ छैन ।

وَمِنْ حَيْثُ خَرَجْتَ فَوَلِّ وَجْهَكَ شَطْرَ الْمَسْجِدِ الْحَرَامِ ۚ وَحَيْثُ مَا كُنتُمْ فَوَلُّوا وُجُوهَكُمْ شَطْرَهُ لِئَلَّا يَكُونَ لِلنَّاسِ عَلَيْكُمْ حُجَّةٌ إِلَّا الَّذِينَ ظَلَمُوا مِنْهُمْ فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِي وَلِأُتِمَّ نِعْمَتِي عَلَيْكُمْ وَلَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٥٠﴾

१५०) र, तिमीहरू जहाँबाट निस्कदा मस्जिदे हरामतिर अनुहार फर्काइहाल र (मुसलमानहरू) तिमी जुनसुकै ठाउँमा भएपनि त्यही मस्जिद तर्फ आफनो अनुहार फर्काउने गर । यस कारणले कि मानिसहरूले तिमीलाई कुनै किसिमबाट दोषारोपण गर्न नपाउन, तर उनीहरू मात्र जो अत्याचारी छन्, दोष लगाउन सक्छन् । तिमीले तिनीहरूसित नडराउनु मसित मात्र डराउनु अनि यो पनि अभिप्राय छ कि मैले तिमीलाई आफ्ना सम्पूर्ण उपकारहरू प्रदान

गरूँ र यस कारण पनि कि तिमी सही बाटोमा हिँड ।

كَمَآ أَرۡسَلۡنَا فِيكُمۡ رَسُولٗا مِّنكُمۡ يَتۡلُواْ عَلَيۡكُمۡ ءَايَٰتِنَا وَيُزَكِّيكُمۡ وَيُعَلِّمُكُمُ ٱلۡكِتَٰبَ وَٱلۡحِكۡمَةَ وَيُعَلِّمُكُم مَّا لَمۡ تَكُونُواْ تَعۡلَمُونَ ﴿١٥١﴾

१५१) जसरी हामीले तिमीहरूमध्ये तिमीहरू बीच एउटा रसूल पठाएका छौं, जसले तिम्रो सामु हाम्रा आयतहरू पढेर सुनाउँदछ, र तिमीलाई पवित्र बनाइराख्दछ र किताब (कुरआन) र कौशल सिकाई राखेको छ र यस्ता कुरा पनि जुन कि तिमी जान्दैनथ्यौ ।

فَٱذۡكُرُونِيٓ أَذۡكُرۡكُمۡ وَٱشۡكُرُواْ لِي وَلَا تَكۡفُرُونِ ﴿١٥٢﴾

१५२) तसर्थ तिमीले मेरो चर्चा गर्नु, म पनि तिमीलाई याद गर्ने गर्छु र मेरो उपकारको गुणगान गर्दै गर्नु र कृतघ्न नहुनु ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ ٱسۡتَعِينُواْ بِٱلصَّبۡرِ وَٱلصَّلَوٰةِۚ إِنَّ ٱللَّهَ مَعَ ٱلصَّٰبِرِينَ ﴿١٥٣﴾

१५३) हे आस्थावानहरू, धैर्य र नमाजसित मद्दतको आशा गर्नु । (निःसन्देह) अल्लाह धैर्यवानहरूको साथ दिन्छ ।

وَلَا تَقُولُواْ لِمَن يُقۡتَلُ فِي سَبِيلِ ٱللَّهِ أَمۡوَٰتُۢۚ بَلۡ أَحۡيَآءٞ وَلَٰكِن لَّا تَشۡعُرُونَ ﴿١٥٤﴾

१५४) र अल्लाहको मार्गमा मारिएकाहरूलाई मृतक नभन । बरु तिनीहरू जीवितै छन् । तर तिमी बुझ्दैनौ ।

وَلَنَبۡلُوَنَّكُم بِشَيۡءٖ مِّنَ ٱلۡخَوۡفِ وَٱلۡجُوعِ وَنَقۡصٖ مِّنَ ٱلۡأَمۡوَٰلِ وَٱلۡأَنفُسِ وَٱلثَّمَرَٰتِۗ وَبَشِّرِ ٱلصَّٰبِرِينَ ﴿١٥٥﴾

१५५) र, हामीले कुनै न कुनै तरिकाबाट शत्रुको त्रास, भोकबाट, धन-सम्पत्ति, ज्यान र फलहरूको कमीबाट तिम्रो परीक्षा गर्नेछौं, (तसर्थ) धैर्य गर्नेहरूलाई शुभ सन्देश सुनाई दिनु ।

ٱلَّذِينَ إِذَآ أَصَٰبَتۡهُم مُّصِيبَةٞ قَالُوٓاْ إِنَّا لِلَّهِ وَإِنَّآ إِلَيۡهِ رَٰجِعُونَ ﴿١٥٦﴾

१५६) यिनीहरूलाई जब कुनै आपत-विपत्ति आउँछ त भन्दछन् कि

हामी अल्लाहकै अधीनमा हौं र हामी उसैतिर फर्केर जानेवाला छौं ।

१५७) यिनीहरूमाथि नै उनको पालनकर्ताको कृपा र उपकारहरू छन् र यिनै सत्य बाटोमा छन् ।

اُولٰٓئِكَ عَلَيۡهِمۡ صَلَوٰتٌ مِّنۡ رَّبِّهِمۡ وَرَحۡمَةٌ وَاُولٰٓئِكَ هُمُ الۡمُهۡتَدُوۡنَ ﴿۱۵۷﴾

१५८) (निःसन्देह) सफा र मर्वा (पर्वत) अल्लाहका निशानी मध्ये हुन् । यसर्थ जुन मानिसले खानए-कअ्बाको हज अथवा उमरः गर्दछ उसले दुवैको परिक्रमा गर्नुमा कुनै पाप हुँदैन । र आफ्नो स्वेच्छाले जो भलो गर्दछ, त अल्लाह कदर गर्नेवाला र राम्ररी जान्नेवाला छ ।

اِنَّ الصَّفَا وَالۡمَرۡوَةَ مِنۡ شَعَآئِرِ اللّٰهِ‌ۚ فَمَنۡ حَجَّ الۡبَيۡتَ اَوِ اعۡتَمَرَ فَلَا جُنَاحَ عَلَيۡهِ اَنۡ يَّطَّوَّفَ بِهِمَا‌ؕ وَمَنۡ تَطَوَّعَ خَيۡرًا ۙ فَاِنَّ اللّٰهَ شَاكِرٌ عَلِيۡمٌ ﴿۱۵۸﴾

१५९) जसले हामीबाट उतारेको आदेश र निर्देशनलाई लुकाउँछन्, यसको बावजूद कि हामीले तिनीहरूलाई आफ्नो किताबमा स्पष्ट रूपमा वर्णन गरेका छौं, त्यसता मानिसहरूलाई अल्लाहले र तमाम धिक्कार गर्नेहरूले धिक्कार्ने गर्दछन् ।

اِنَّ الَّذِيۡنَ يَكۡتُمُوۡنَ مَآ اَنۡزَلۡنَا مِنَ الۡبَيِّنٰتِ وَالۡهُدٰى مِنۡۢ بَعۡدِ مَا بَيَّنّٰهُ لِلنَّاسِ فِى الۡكِتٰبِ‌ۙ اُولٰٓئِكَ يَلۡعَنُهُمُ اللّٰهُ وَيَلۡعَنُهُمُ اللّٰعِنُوۡنَ ﴿۱۵۹﴾

१६०) तर ती मानिसहरू जसले पश्चताप गर्दछन् र आफ्नो सुधार गरिहाल्छन् र (आदेशलाई) बयान गर्दछन्, त्यस्ताको क्षमा याचना मैले स्वीकार गरिदिन्छु, म अत्यन्त क्षमादाता र दयावान् छु ।

اِلَّا الَّذِيۡنَ تَابُوۡا وَاَصۡلَحُوۡا وَبَيَّنُوۡا فَاُولٰٓئِكَ اَتُوۡبُ عَلَيۡهِمۡ‌ۚ وَاَنَا التَّوَّابُ الرَّحِيۡمُ ﴿۱۶۰﴾

१६१) निःसन्देह जुन काफिर आफ्नो कुफ्रको अवस्थामा मर्छ, त्यस्ता माथि

اِنَّ الَّذِيۡنَ كَفَرُوۡا وَمَاتُوۡا وَهُمۡ كُفَّارٌ اُولٰٓئِكَ عَلَيۡهِمۡ لَعۡنَةُ اللّٰهِ وَالۡمَلٰٓئِكَةِ وَالنَّاسِ اَجۡمَعِيۡنَ ﴿۱۶۱﴾

अल्लाह, उसको फरिश्ताहरू र सबै मानिसको धिक्कार हुनेछ ।

خٰلِدِيْنَ فِيْهَا ۚ لَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنْظَرُوْنَ ﴿١٦٢﴾

१६२) (तिनीहरू) सधैं यसैमा रहने छन् । न त उनको सजाय कम हुनेछ, न त त्यसबाट केही मोहलत पाउने छन् ।

وَاِلٰهُكُمْ اِلٰهٌ وَّاحِدٌ ۚ لَآ اِلٰهَ اِلَّا هُوَ الرَّحْمٰنُ الرَّحِيْمُ ﴿١٦٣﴾

१६३) तिमीहरू सबैको पूज्य मात्र एउटै अल्लाह हो। उस बाहेक कोही सत्य पूजनीय छैन । ऊ अत्यन्त दयालु र असीम कृपालु छ ।

اِنَّ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَالْفُلْكِ الَّتِيْ تَجْرِيْ فِي الْبَحْرِ بِمَا يَنْفَعُ النَّاسَ وَمَآ اَنْزَلَ اللّٰهُ مِنَ السَّمَآءِ مِنْ مَّآءٍ فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا وَبَثَّ فِيْهَا مِنْ كُلِّ دَآبَّةٍ ۪ وَّتَصْرِيْفِ الرِّيٰحِ وَالسَّحَابِ الْمُسَخَّرِ بَيْنَ السَّمَآءِ وَالْاَرْضِ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿١٦٤﴾

१६४) आकाशहरू र पृथ्वीको सृष्टिमा र रातदिनको प्रक्रियामा डुङ्गा जुन कि, मानिसहरूलाई फाइदा पुग्ने सरसामान बोकी समुद्रमा बगिरहेछन् र वर्षा जुन कि अल्लाहले आकाशबाट वृष्टि गर्छ र जसबाट पृथ्वीको मृत भू-भाग जीवित हुन्छ पृथ्वीमा प्रत्येक किसिमका जनावरहरू फैलाउनु, हावाको दिशा परिवर्तन गर्नु र बादलहरूमा, जुन कि आकाश र धर्तीको बीचमा घुम्छन्, समभ्मदारका लागि यो सबै अल्लाहको कुदरत (शक्ति)का निशानीहरू हुन् ।

وَمِنَ النَّاسِ مَنْ يَّتَّخِذُ مِنْ دُوْنِ اللّٰهِ اَنْدَادًا يُّحِبُّوْنَهُمْ كَحُبِّ اللّٰهِ ۭ وَالَّذِيْنَ اٰمَنُوْٓا اَشَدُّ حُبًّا لِّلّٰهِ ۭ وَلَوْ يَرَى الَّذِيْنَ ظَلَمُوْٓا اِذْ يَرَوْنَ الْعَذَابَ ۙ اَنَّ الْقُوَّةَ لِلّٰهِ جَمِيْعًا ۙ وَّاَنَّ اللّٰهَ شَدِيْدُ الْعَذَابِ ﴿١٦٥﴾

१६५) केही मानिसहरू यस्ता पनि छन्, जसले अल्लाहको शक्तिमा अरुलाई साभ्फेदार बनाएर तिनलाई अल्लाह जस्तै मायाँ गर्दछन्, र आस्थावानहरू अल्लाहसंगको प्रेममा अत्यन्त

कठोर हुन्छन् । कति राम्रो हुन्थ्यो यदि अन्यायीहरूले अल्लाहबाट हुने सजाय देखेर यो जानेको भए कि सबै प्रकारको शक्ति अल्लाहमा नै नीहित छ र यो पनि कि अल्लाह कठोर सजाय दिनेवाला छ (त कदापि कसैलाई साझेदार बनाउने थिएनन्) ।

१६६) जुन दिन (नास्तिक) नाइकेहरू आफ्ना अनुयायीहरूसित विमुख हुने छन् र (दुवैले) सजाय आफ्ना आँखाले देख्ने छन् त तिनीहरूसंगको सबै नाता, सम्बन्धहरू समाप्त हुने छन् ।

إِذْ تَبَرَّأَ الَّذِينَ اتُّبِعُوا مِنَ الَّذِينَ اتَّبَعُوا وَرَأَوُا الْعَذَابَ وَتَقَطَّعَتْ بِهِمُ الْأَسْبَابُ ﴿١٦٦﴾

१६७) र (यो देखेर) अनुयायीहरूले भन्ने छन् कि धेरै राम्रो हुने थियो, यदि हामी संसारमा पुनः जाने सौभाग्य पाउने भए। जसरी हामीसित यिनी विमुख भइराखेका छन् त्यस्तै हामी पनि यिनीहरूसित विमुख हुन सक्ने थियौं। यसप्रकार अल्लाहले तिनको कर्म तिनीहरूलाई उनको आकांक्षाको रूपमा देखाउने छ र तिनीहरू नर्कबाट निस्कन सक्ने छैनन् ।

وَقَالَ الَّذِينَ اتَّبَعُوا لَوْ أَنَّ لَنَا كَرَّةً فَنَتَبَرَّأَ مِنْهُمْ كَمَا تَبَرَّءُوا مِنَّا ۗ كَذَٰلِكَ يُرِيهِمُ اللَّهُ أَعْمَالَهُمْ حَسَرَاتٍ عَلَيْهِمْ ۖ وَمَا هُمْ بِخَارِجِينَ مِنَ النَّارِ ﴿١٦٧﴾

१६८) मानिसहरू! जति कुराहरू धर्तीमा हलाल छन् ती खानु र पिउनु र शैतानको पद चिन्हहरूमा नहिंड । त्यो तिम्रो खुल्लम-खुल्ला शत्रु हो ।

يَا أَيُّهَا النَّاسُ كُلُوا مِمَّا فِي الْأَرْضِ حَلَالًا طَيِّبًا وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ ۚ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿١٦٨﴾

१६९) त्यसले त तिमीलाई दुष्टता र निर्लज्जताको र अल्लाहको सम्बन्धमा यस्ता कुरा भन्न आदेश दिन्छ जुन कि तिमीलाई ज्ञान छैन ।

إِنَّمَا يَأْمُرُكُم بِالسُّوٓءِ وَالْفَحْشَآءِ وَأَن تَقُولُوا عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿١٦٩﴾

१७०) र जब तिनीहरूलाई भनिन्छ कि अल्लाहले उतारेको किताबको अनुशरण गर, त उत्तर दिन्छन् कि (होइन), बरु हामीले त्यसको अनुशरण गर्छौं, जसका हाम्रा पूर्वजहरूले अनुशरण गरेका थिए, यद्यपि तिनका पूर्वजहरू महाअज्ञानी र सही बाटोमा नहिंड्ने भएतापनि तिनीहरू उनीहरूकै अनुशरण गर्ने छन् ?

وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَآ أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَآ أَلْفَيْنَا عَلَيْهِ ءَابَآءَنَآ ۗ أَوَلَوْ كَانَ ءَابَآؤُهُمْ لَا يَعْقِلُونَ شَيْـًٔا وَلَا يَهْتَدُونَ ﴿١٧٠﴾

१७१) अनास्थावानहरूको तुलना ती जनावरहरूसंग गर्न सकिन्छ जसले आफ्नो गोठालोको आवाज र पुकार मात्र सुन्छन् र केही पनि बुझ्दैनन् । (यिनीहरू) बहिरा, लाटा र अन्धा छन्, यिनको बुद्धि छैन ।

وَمَثَلُ الَّذِينَ كَفَرُوا كَمَثَلِ الَّذِى يَنْعِقُ بِمَا لَا يَسْمَعُ إِلَّا دُعَآءً وَنِدَآءً ۚ صُمٌّۢ بُكْمٌ عُمْىٌ فَهُمْ لَا يَعْقِلُونَ ﴿١٧١﴾

१७२) हे आस्थावानहरू! जुन पवित्र कुराहरू हामीले तिमीलाई प्रदान गरेका छौं, तिनको उपभोग गर, अल्लाहले प्रदान गरेका उपहारहरूको लागि आभार पनि प्रकट गर, यदि तिमी उसैको उपासना गर्दछौं ।

يَٰٓأَيُّهَا الَّذِينَ ءَامَنُوا كُلُوا مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ وَاشْكُرُوا لِلَّهِ إِن كُنتُمْ إِيَّاهُ تَعْبُدُونَ ﴿١٧٢﴾

१७३) तिम्रो लागि मृतक जनावर, रगत, सुँगुरको मासु र जुन कुरामा

إِنَّمَا حَرَّمَ عَلَيْكُمُ الْمَيْتَةَ وَالدَّمَ وَلَحْمَ الْخِنزِيرِ وَمَآ أُهِلَّ بِهِۦ لِغَيْرِ اللَّهِ ۖ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَلَا عَادٍ فَلَآ

إِثْمَ عَلَيْهِ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٧٣﴾

अल्लाह बाहेक अरु कसैको नाम पुकारिन्छ, हराम (वर्जित) बनाइएको छ, तर जो मजबूर छ र अल्लाहको आदेशको सीमा उल्लंघन र आवश्यक्ता (प्राण बचाउन) को सीमा नाघ्दैन, त्यस निरुपाय व्यक्तिको लागी कुनै पाप हुँदैन । (निःसन्देह) अल्लाह क्षमा प्रदान गर्ने वाला, दयावान छ ।

إِنَّ الَّذِينَ يَكْتُمُونَ مَا أَنزَلَ اللَّهُ مِنَ الْكِتَابِ وَيَشْتَرُونَ بِهِ ثَمَنًا قَلِيلًا ۙ أُولَٰئِكَ مَا يَأْكُلُونَ فِي بُطُونِهِمْ إِلَّا النَّارَ وَلَا يُكَلِّمُهُمُ اللَّهُ يَوْمَ الْقِيَامَةِ وَلَا يُزَكِّيهِمْ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٧٤﴾

१७४) निःसन्देह जुन मानिसहरू अल्लाहबाट उतारिएको किताबको आदेशलाई छुपाएर थोरै मूल्यमा बेच्दछन् निःसन्देह तिनले आफ्नो पेटमा आगो भरिराखेका छन् । यस्ता मानिसहरूसित अल्लाहले कियामतका दिन कुरा पनि गर्ने छैन न त उनीहरूलाई पापबाट मुक्त गर्नेछ । अपितु तिनीहरूका लागि कष्टदायक सजाय हुनेछ ।

أُولَٰئِكَ الَّذِينَ اشْتَرَوُا الضَّلَالَةَ بِالْهُدَىٰ وَالْعَذَابَ بِالْمَغْفِرَةِ ۚ فَمَا أَصْبَرَهُمْ عَلَى النَّارِ ﴿١٧٥﴾

१७५) यी त्यस्ता मानिसहरू हुन् जसले असल बाटोको सट्टा नराम्रो बाटो र मुक्तिको सट्टा सजाय किनेका छन् । यिनीहरूले नर्कको आगोलाई कति सहने छन् ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ نَزَّلَ الْكِتَابَ بِالْحَقِّ ۗ وَإِنَّ الَّذِينَ اخْتَلَفُوا فِي الْكِتَابِ لَفِي شِقَاقٍ بَعِيدٍ ﴿١٧٦﴾

१७६) यो सजाय यसकारण हो कि अल्लाहले सच्चा किताब उतार्‍यो र जुन मानिसहरूले यस किताबको सम्बन्धमा विरोध गरे, ती अड्डेरिपनामा धेरै टाढा भएका छन् ।

१७७) तिमीहरू अफनो मुहार पूर्व र पश्चिमतर्फ गर्दैमा कुनै पुण्यकार्य छैन, अपितु असल धर्मी त्यो हो जसले अल्लाह, कयामत, फरिश्ताहरू, अल्लाहको किताब र पैगम्बरहरूमाथि आस्था राख्दछन्, र जसले सम्पति प्रतिको मायाको बावजूद (त्यसबाट) नातेदार, अनाथ, निःसहाय, यात्रु र भिखारी-हरूलाई प्रदान गर्दछ र दासहरूलाई मुक्त गराउनमा खर्च गर्दछ, र नियमित नमाज पढद्छ र जकात दिन्छ, र दिएको वचन पुरा गर्दछ । गरीबी दुःख र युद्धको बेला धैर्य राख्दछ । यिनै सच्चा र असल मानिसहरू हुन् ।

ليس البر ان تولوا وجوهكم قبل المشرق
والمغرب ولكن البر من امن بالله واليوم
الاخر والملئكة والكتب والنبين واتى المال
على حبه ذوي القربى واليتمى والمسكين
وابن السبيل والسائلين وفي الرقاب
واقام الصلوة واتى الزكوة والموفون بعهدهم
اذا عهدوا والصبرين في البأساء
والضراء وحين البأس اولئك الذين
صدقوا واولئك هم المتقون ﴿١٧٧﴾

१७८) हे मोमिनहरू! तिमीलाई हत्या गरिएको मानिसको सम्बन्धमा किसास (समानताको कानून) को आदेश दिइएको छ स्वतन्त्र मानिसको बदलामा स्वतन्त्र मानिस र दासको सट्टा दास र स्त्रीको बदला स्त्री हो यदि हत्यारालाई हत्या गरिएको व्यक्तिको दाजु भाइको तर्फबाट क्षमादान गरिन्छ भने त्यस उपकारलाई स्वीकार गर्नुपर्छ । हत्या गरिएको वारिसलाई चित्त बुझ्दो तरिकाले माँग गरेमा उचित रूपमा क्षतिपूर्ति गर्नु पर्दछ । यो परवरदिगारको तर्फबाट तिमीलाई

يا ايها الذين امنوا كتب عليكم القصاص في
القتلى الحر بالحر والعبد بالعبد والانثى
بالانثى فمن عفي له من اخيه شيء فاتباع
بالمعروف واداء اليه باحسان ذلك تخفيف من
ربكم ورحمة فمن اعتدى بعد ذلك فله عذاب
اليم ﴿١٧٨﴾

सुविधा र कृपा हो । जसले यसपछि पनि सीमाको उल्लंघन गर्दछ, त्यसलाई कष्टदायक सजाय हुनेछ ।

١٧٩) हे विवेकीहरू! केसासको (आदेश) मा तिम्रो लागि जिन्दगी छ, यसले गर्दा तिमीहरू(अनाहक् हत्याबाट) सुरक्षित रहनेछौ ।

وَلَكُمْ فِي الْقِصَاصِ حَيٰوةٌ يَّاُولِي الْاَلْبَابِ لَعَلَّكُمْ تَتَّقُوْنَ ﴿١٧٩﴾

१८०) तिम्रो लागि यो अनिवार्य गरिएको छ कि जब तिमीहरूमध्ये कसैको मृत्युको समय नजिक होस्, र यदि उसले आफ्नो सम्पत्ति छाड्नेवाला छ भने आफ्नो आमा-बाबु र नातेदारहरूका लागि राम्रो हुने किसिमको इच्छापत्र गरेर जाओस् । उपासकहरूका लागि यो वास्तविकता प्रमाणित छ ।

كُتِبَ عَلَيْكُمْ اِذَا حَضَرَ اَحَدَكُمُ الْمَوْتُ اِنْ تَرَكَ خَيْرًا ۖ اِلْوَصِيَّةُ لِلْوَالِدَيْنِ وَالْاَقْرَبِيْنَ بِالْمَعْرُوْفِ ۚ حَقًّا عَلَى الْمُتَّقِيْنَ ﴿١٨٠﴾

१८१) अब यो सुने पछि कुनै व्यक्तिले यसलाई (इच्छा पत्रलाई) बदल्छ भने त्यसको पाप त्यो बदल्ने मानिसहरूमाथि हुन्छ । निःसन्देह अल्लाह सुन्नेवाला (र) जान्नेवाला छ ।

فَمَنْ بَدَّلَهٗ بَعْدَمَا سَمِعَهٗ فَاِنَّمَآ اِثْمُهٗ عَلَى الَّذِيْنَ يُبَدِّلُوْنَهٗ ۭ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿١٨١﴾

१८२) परन्तु जसले वसीयत गर्ने मानिसको पक्षपात गर्न अथवा अनुचित वसीयत (इच्छा पत्र) बाट डर आशंका गर्छ । परस्पर (हकदारहरू बीच) समझदारी गराइदिएमा उसलाई कुनै पाप लाग्दैन । अल्लाह क्षमा प्रदान गर्नेवाला दयालु छ ।

فَمَنْ خَافَ مِنْ مُّوْصٍ جَنَفًا اَوْ اِثْمًا فَاَصْلَحَ بَيْنَهُمْ فَلَآ اِثْمَ عَلَيْهِ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٨٢﴾

१८३) आस्थावानहरू हो ! (मोमिनहरू) तिमीलाई रोजा राख्नु अनिवार्य गरिएको छ जसरी तिमीभन्दा पहिलेका मानिसहरूलाई अनिवार्य गरिएको थियो । जसबाट कि तिमी संयमी बन्न सक ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ كُتِبَ عَلَيۡكُمُ ٱلصِّيَامُ كَمَا كُتِبَ عَلَى ٱلَّذِينَ مِن قَبۡلِكُمۡ لَعَلَّكُمۡ تَتَّقُونَ ١٨٣

१८४) (रोज़ाका समय) गणनाका केही दिनहरू हुन्, तर तिमीहरूमध्ये जुन मानिस विरामी छ अथवा यात्रामा छ, तब उसले अन्य दिनहरूमा रोज़ाको दिनको संख्या पूरा गरोस्, र सामर्थवानले (अति वृद्ध वा निको नहुने रोगको कारण ब्रत बस्ने क्षमता राख्दैन भने) तिनीहरूले ब्रतको सट्टा एउटा गरीबलाई खाना खुवाउनु । यदि कुनै मानिस आफ्नो इच्छा अनुसार अझ बढी गर्दछ त त्यसको निम्ति झन् राम्रो हुनेछ । तर तिम्रो लागि ब्रत बस्नु नै उत्तम काम हो यदि तिमी ज्ञानी छौ ।

أَيَّامٗا مَّعۡدُودَٰتٖۚ فَمَن كَانَ مِنكُم مَّرِيضًا أَوۡ عَلَىٰ سَفَرٖ فَعِدَّةٞ مِّنۡ أَيَّامٍ أُخَرَۚ وَعَلَى ٱلَّذِينَ يُطِيقُونَهُۥ فِدۡيَةٞ طَعَامُ مِسۡكِينٖۖ فَمَن تَطَوَّعَ خَيۡرٗا فَهُوَ خَيۡرٞ لَّهُۥۚ وَأَن تَصُومُواْ خَيۡرٞ لَّكُمۡ إِن كُنتُمۡ تَعۡلَمُونَ ١٨٤

१८५) रमाजानको महिना त्यो हो जुन महिनामा कुरआन उतारियो, जो मानिसहरूको लागि पथ प्रदर्शक हो र जसमा मार्गदर्शन र सत्य र असत्यलाई छुट्टयाउने निशानीहरू छन् । तिमीहरूमध्ये जसले पनि यो महिना पाओस् त्यसले पूरा महिनाको ब्रत बसोस् हो, जो बिरामी छ अथवा यात्रामा छ ऊ

شَهۡرُ رَمَضَانَ ٱلَّذِيٓ أُنزِلَ فِيهِ ٱلۡقُرۡءَانُ هُدٗى لِّلنَّاسِ وَبَيِّنَٰتٖ مِّنَ ٱلۡهُدَىٰ وَٱلۡفُرۡقَانِۚ فَمَن شَهِدَ مِنكُمُ ٱلشَّهۡرَ فَلۡيَصُمۡهُۖ وَمَن كَانَ مَرِيضًا أَوۡ عَلَىٰ سَفَرٖ فَعِدَّةٞ مِّنۡ أَيَّامٍ أُخَرَۗ يُرِيدُ ٱللَّهُ بِكُمُ ٱلۡيُسۡرَ وَلَا يُرِيدُ بِكُمُ ٱلۡعُسۡرَ وَلِتُكۡمِلُواْ ٱلۡعِدَّةَ وَلِتُكَبِّرُواْ ٱللَّهَ عَلَىٰ مَا هَدَىٰكُمۡ وَلَعَلَّكُمۡ تَشۡكُرُونَ ١٨٥

अन्य दिनहरूमा (व्रत बसी) त्यसको गणना पूरा गरोस् । अल्लाह तिम्रो निम्ति सुविधा चाहन्छ कठोरता चाहदैन । उसले चाहन्छ कि तिमीले गिन्ती (रोजाको) पूरा गर र अल्लाहले मार्गदर्शन गरेवापत उसको प्रशंसा वर्णन गर, ताकि उसप्रति कृतज्ञ बन्न सक ।

وَإِذَا سَأَلَكَ عِبَادِي عَنِّي فَإِنِّي قَرِيبٌ ۖ أُجِيبُ دَعْوَةَ الدَّاعِ إِذَا دَعَانِ ۖ فَلْيَسْتَجِيبُوا لِي وَلْيُؤْمِنُوا بِي لَعَلَّهُمْ يَرْشُدُونَ ﴿١٨٦﴾

१८६) (हे पैगम्बर !) जब तपाईसित मेरा भक्तहरूले मेरो बारेमा प्रश्न गरुन, तपाई तब भनि दिनुस् कि म (अल्लाह) तिम्रो धेरै नजिक छु मलाई पुकार्ने प्रत्येक व्यक्ति जहिले पुकार्दछ म स्वीकार गर्दछु । तसर्थ तिनीहरूलाई पनि यो आवश्यक छ कि मेरा आदेशलाई मानुन् र म माथि आस्था राखुन् ताकि सत्य बाटो पाउन सकुन् ।

أُحِلَّ لَكُمْ لَيْلَةَ الصِّيَامِ الرَّفَثُ إِلَىٰ نِسَائِكُمْ ۚ هُنَّ لِبَاسٌ لَّكُمْ وَأَنتُمْ لِبَاسٌ لَّهُنَّ ۗ عَلِمَ اللَّهُ أَنَّكُمْ كُنتُمْ تَخْتَانُونَ أَنفُسَكُمْ فَتَابَ عَلَيْكُمْ وَعَفَا عَنكُمْ ۖ فَالْآنَ بَاشِرُوهُنَّ وَابْتَغُوا مَا كَتَبَ اللَّهُ لَكُمْ ۚ وَكُلُوا وَاشْرَبُوا حَتَّىٰ يَتَبَيَّنَ لَكُمُ الْخَيْطُ الْأَبْيَضُ مِنَ الْخَيْطِ الْأَسْوَدِ مِنَ الْفَجْرِ ۖ ثُمَّ أَتِمُّوا الصِّيَامَ إِلَى اللَّيْلِ ۚ وَلَا تُبَاشِرُوهُنَّ وَأَنتُمْ عَاكِفُونَ فِي الْمَسَاجِدِ ۗ تِلْكَ حُدُودُ اللَّهِ فَلَا تَقْرَبُوهَا ۗ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ آيَاتِهِ لِلنَّاسِ لَعَلَّهُمْ يَتَّقُونَ ﴿١٨٧﴾

१८७) रोजाको रात्रीमा तिमीलाई आफ्नो स्वास्नीसित सहवासको अनुमति दिइएको छ । तिनीहरू तिम्रा वस्त्र हुन् र तिमीहरू उनका वस्त्र हौ । अल्लाहलाई त्यस कुराको जानकारी छ जुन कि तिमीहरूले गोप्य रूपले गर्दथ्यौ । (तसर्थ) उसले तिमीमाथि कृपा गरी तिम्रो क्षमायाचना स्वीकार गरी तिम्रो क्रियाकलापहरूलाई क्षमा गरिदियो अब तिमीलाई सहवासगर्ने र अल्लाहले जे निर्धारित गरेको छ

त्यस चीजको खोजी गर्ने इजाजत छ । तिमीले तब सम्म खान पीन गर जबसम्म कि प्रातःको सेतो धर्को (रातीको) कालो धर्कोबाट स्पष्ट भई नजाओस् । फेरि व्रतबसी) साँझसम्म रोजा पूरा गर र जब तिमी मस्जिदहरूमा एतिकाफ (एकान्तमा उपासना) को लागि बसेका हुन्छौ, तब आफ्ना स्त्रीसित सहवास नगर । यी अल्लाहबाट निर्धारित गरिएका सीमा हुन्, तिनीहरू छेउ पनि नजानु । यस्तै किसिमले अल्लाह आफ्ना आयतहरू मानिसहरूलाई स्पष्ट रूपमा वर्णन गर्दछ, ताकि तिनीहरू आत्मसंयमी बनुन् ।

१८८) र, एक अर्काको सम्पत्ति अनुचित रूपमा उपभोग नगर, न त हाकिमहरूलाई घूस दिएर कसैको केही सम्पत्ति अन्यायपूर्वक आफ्नो बनाउनु जबकि तिमीलाई थाहा छँदैछ ।

وَلَا تَأْكُلُوٓا۟ أَمْوَٰلَكُم بَيْنَكُم بِٱلْبَٰطِلِ وَتُدْلُوا۟ بِهَآ إِلَى ٱلْحُكَّامِ لِتَأْكُلُوا۟ فَرِيقًا مِّنْ أَمْوَٰلِ ٱلنَّاسِ بِٱلْإِثْمِ وَأَنتُمْ تَعْلَمُونَ ﴿١٨٨﴾

१८९) (हे मोहम्मद!) मानिसहरूले तपाईसँग चन्द्रको (घट-बढ) बारेमा सोध्छन्, भनि दिनु कि यो मानिसहरूको (पूजा) समय र हजको समय पत्ता लगाउने माध्यम हो । र नेकी यो होइन कि तिमी घरहरूको पछाडिबाट प्रवेश गर्ने गर, बरु नेकीवाला त्यो हो जो आत्म-संयमी

يَسْـَٔلُونَكَ عَنِ ٱلْأَهِلَّةِ ۖ قُلْ هِىَ مَوَٰقِيتُ لِلنَّاسِ وَٱلْحَجِّ ۗ وَلَيْسَ ٱلْبِرُّ بِأَن تَأْتُوا۟ ٱلْبُيُوتَ مِن ظُهُورِهَا وَلَٰكِنَّ ٱلْبِرَّ مَنِ ٱتَّقَىٰ ۗ وَأْتُوا۟ ٱلْبُيُوتَ مِنْ أَبْوَٰبِهَا ۚ وَٱتَّقُوا۟ ٱللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٨٩﴾

हुन्छ, र घरहरूमा तिमी मूल ढोकाहरूबाट प्रवेश गर्ने गर र अल्लाहसँग डर मान्ने गर ताकि तिमी सफल हुन सक ।

وَقَاتِلُوا فِي سَبِيلِ اللَّهِ الَّذِينَ
يُقَاتِلُونَكُمْ وَلَا تَعْتَدُوا ۚ إِنَّ اللَّهَ
لَا يُحِبُّ الْمُعْتَدِينَ ﴿١٩٠﴾

१९०) तिमीहरूमध्ये जो मानिसहरू तिमीसँग लडाई गर्न खोज्छन्, तिनीहरूसँग तिमी पनि अल्लाहको मार्गमा संघर्ष गर, तर सीमा ननाँघ्नु, किन भने सीमा अतिक्रमण गर्नेहरू अल्लाहलाई रुचाउँदैनन् ।

وَاقْتُلُوهُمْ حَيْثُ ثَقِفْتُمُوهُمْ وَأَخْرِجُوهُمْ مِنْ
حَيْثُ أَخْرَجُوكُمْ ۚ وَالْفِتْنَةُ أَشَدُّ مِنَ الْقَتْلِ ۚ
وَلَا تُقَاتِلُوهُمْ عِنْدَ الْمَسْجِدِ الْحَرَامِ حَتَّىٰ
يُقَاتِلُوكُمْ فِيهِ ۖ فَإِنْ قَاتَلُوكُمْ
فَاقْتُلُوهُمْ ۗ كَذَٰلِكَ جَزَاءُ الْكَافِرِينَ ﴿١٩١﴾

१९१) तिनीहरू जहाँ फेला पर्छन् त्यहीं मार र जहाँबाट तिनीहरूले तिमीहरूलाई निस्कासित गरेका छन् । त्यहाँबाट तिमीहरूले पनि तिनीहरूलाई निकाली हाल (र सुन) दंगा मच्चाउनु, रक्तपात भन्दा पनि गम्भीर हुन्छ र जबसम्म तिनीहरूले तिमीहरूसित मस्जिदे हराम (खानए कअ्बा) को करीबमा आई संघर्ष गर्दैनन् तबसम्म तिमीहरूले पनि त्यहाँ तिनीहरूसँग संघर्ष नगर, तर हो ! यदि तिनीहरूले तिमीहरूसित युद्ध गर्दछन् तब तिमीहरूले पनि तिनीहरूसंग युद्ध गर । अनास्थावानहरूका लागि बदला यही हो ।

فَإِنِ انْتَهَوْا فَإِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ﴿١٩٢﴾

१९२) परन्तु यदि (युद्धबाट) तिनीहरू स्वयम् रोकिन्छन् भने अल्लाह क्षमा प्रदान गर्नेवाला दयावान् छ ।

१९३) तिनीहरूसँग त्यस बेलासम्म संघर्ष गर्दै गर्नु जबसम्म कि उपद्रव समाप्त हुँदैन । र धर्म अल्लाहको निम्ति (प्रतिष्ठित) नभई जाओस् । र यदि तिनीहरू संघर्षको परित्याग गर्दछन् (भने तिमी पनि परित्याग गरिहाल), किनकि अत्याचारी बाहेक अरु कसैमाथि अत्याचार गर्नु हुँदैन ।

وَقٰتِلُوْهُمْ حَتّٰى لَا تَكُوْنَ فِتْنَةٌ وَّيَكُوْنَ الدِّيْنُ لِلّٰهِ ۚ فَاِنِ انْتَهَوْا فَلَا عُدْوَانَ اِلَّا عَلَى الظّٰلِمِيْنَ ﴿١٩٣﴾

१९४) सम्मानको (हरामको) महीना सम्मानित महीनाको साटो छ र सम्मानका कुराहरू एक अर्काको बदला सरह हुन् तसर्थ यदि कसैले तिमीमाथि अतिक्रमण गर्छ भने जुन किसिमको अतिक्रमण त्यसले गर्दछ, त्यस्तै तिमीले त्यसमाथि गर र अल्लाहसित डर, याद राख कि अल्लाह डर मान्नेहरूको साथमा छ ।

اَلشَّهْرُ الْحَرَامُ بِالشَّهْرِ الْحَرَامِ وَالْحُرُمٰتُ قِصَاصٌ ۚ فَمَنِ اعْتَدٰى عَلَيْكُمْ فَاعْتَدُوْا عَلَيْهِ بِمِثْلِ مَا اعْتَدٰى عَلَيْكُمْ ۪ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٩٤﴾

१९५) अल्लाहको मार्गमा खर्च गर र आफैले आफूलाई विनाशमा न पार र सत्कर्म गर निःसन्देह अल्लाह भलाई गर्नेहरूलाई माया गर्दछ ।

وَاَنْفِقُوْا فِيْ سَبِيْلِ اللّٰهِ وَلَا تُلْقُوْا بِاَيْدِيْكُمْ اِلَى التَّهْلُكَةِ ۛ وَاَحْسِنُوْا ۛ اِنَّ اللّٰهَ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٩٥﴾

१९६) अल्लाहको लागि हज र उमरा सम्पन्न गर, हो, यदि तिमीहरूलाई रोकिहालोस् तब जस्तो किसिमको बलि गर्न सक्छौ, गरिहाल । जबसम्म बलि आफ्नो ठाउँमा पुग्दैन, तबसम्म आफ्नो कपाल नफाल तर यदि तिमीहरूमध्ये

وَاَتِمُّوا الْحَجَّ وَالْعُمْرَةَ لِلّٰهِ ۭ فَاِنْ اُحْصِرْتُمْ فَمَا اسْتَيْسَرَ مِنَ الْهَدْيِ ۚ وَلَا تَحْلِقُوْا رُءُوْسَكُمْ حَتّٰى يَبْلُغَ الْهَدْيُ مَحِلَّهٗ ۭ فَمَنْ كَانَ مِنْكُمْ مَّرِيْضًا اَوْ بِهٖٓ اَذًى مِّنْ رَّاْسِهٖ فَفِدْيَةٌ مِّنْ صِيَامٍ اَوْ صَدَقَةٍ اَوْ نُسُكٍ ۚ فَاِذَآ اَمِنْتُمْ ۪ فَمَنْ تَمَتَّعَ بِالْعُمْرَةِ اِلَى الْحَجِّ فَمَا اسْتَيْسَرَ مِنَ الْهَدْيِ ۚ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ فِي الْحَجِّ وَسَبْعَةٍ اِذَا رَجَعْتُمْ ۭ

تِلْكَ عَشَرَةٌ كَامِلَةٌ ۗ ذَٰلِكَ لِمَن لَّمْ يَكُنْ أَهْلُهُ حَاضِرِي الْمَسْجِدِ الْحَرَامِ ۚ وَاتَّقُوا اللَّهَ وَاعْلَمُوا أَنَّ اللَّهَ شَدِيدُ الْعِقَابِ ﴿١٩٦﴾

कोही बिरामी छ, अथवा त्यसको टाउकोमा कुनै प्रकारको व्यथा छ, (र मुन्डन गराई दिन्छ) त त्यसको बदलामा व्रत बसोस् वा दान गरोस् वा कुर्बानी गरोस् । फेरि जब तिमी अमनको अवस्थामा रहँदा (तिमीहरूमध्ये) जसले उमराको बेलादेखि हजसम्म लाभान्वित हुन चाहन्छ उसमा क्षमता छ भने कुर्बानी गरोस् र जसलाई कुर्बानी गर्ने क्षमता छैन उसले तीन दिनको उपवास हजका दिनहरूमा पूरा गरोस् र सात दिनको रोजा आफ्नो घर फर्केपछि । यी पूरा दश दिन भए । यो आदेश ती मानिसका लागि हो जो मक्काका बासिन्दा होइनन् । अल्लाहसँग डर्ने गर, र याद राख कि, अल्लाह कठोर सजाय दिनेवाला छ ।

الْحَجُّ أَشْهُرٌ مَّعْلُومَاتٌ ۚ فَمَن فَرَضَ فِيهِنَّ الْحَجَّ فَلَا رَفَثَ وَلَا فُسُوقَ وَلَا جِدَالَ فِي الْحَجِّ ۗ وَمَا تَفْعَلُوا مِنْ خَيْرٍ يَعْلَمْهُ اللَّهُ ۗ وَتَزَوَّدُوا فَإِنَّ خَيْرَ الزَّادِ التَّقْوَىٰ ۚ وَاتَّقُونِ يَا أُولِي الْأَلْبَابِ ﴿١٩٧﴾

१९७) हजका महीनाहरू निर्धारित छन् । तसर्थ यदि कुनै मानिसले यी महिनाहरूमा हजको नीयत गरिसकेको छ, भने उसले (हजका दिनहरूमा) स्वास्नीहरूसँग सहवास नगरोस् र न कुनै नराम्रो काम गरोस् र न कुनै मानिससँग झगडा गरोस् । र तिमीले जुन नेक काम गर्नेछौं, त्यो अल्लाहलाई थाहा हुनेछ । र आफ्नो साथमा यात्राको खर्च लिई हिंड । किनभने सबभन्दा राम्रो

बाटो खर्च त अल्लाहको डर हो । हे बुद्धिमानहरू ! म सँग डर्ने गर ।

لَيْسَ عَلَيْكُمْ جُنَاحٌ أَنْ تَبْتَغُوا فَضْلًا مِّنْ رَّبِّكُمْ ۚ فَإِذَا أَفَضْتُمْ مِّنْ عَرَفَاتٍ فَاذْكُرُوا اللَّهَ عِنْدَ الْمَشْعَرِ الْحَرَامِ ۖ وَاذْكُرُوهُ كَمَا هَدَاكُمْ وَإِنْ كُنْتُمْ مِّنْ قَبْلِهِ لَمِنَ الضَّالِّينَ ﴿١٩٨﴾

१९८) तिमीमाथि (हजका दिनहरूमा व्यापारको माध्यमबाट) आफ्नो जीविका प्राप्त गर्नमा केही पाप छैन । जब तिमीहरू अरफातबाट फर्कन्छौ, तब "मश्अरुल हराममा" (मुजदलेफामा) अल्लाहलाई स्मरण गर, र उसको स्मरण त्यसरी गर जसरी उसले तिमीहरूलाई आदेश गरेको छ यद्यपि यसभन्दा अगाडि तिमीहरू बाटो विराएका थियौ ।

ثُمَّ أَفِيضُوا مِنْ حَيْثُ أَفَاضَ النَّاسُ وَاسْتَغْفِرُوا اللَّهَ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٩٩﴾

१९९) फेरि जहाँबाट अरु मानिसहरू फिर्ता हुन्छन्, तिमी पनि फर्क र अल्लाहबाट क्षमाको विन्ती गर्दै गर, निःसन्देह अल्लाह क्षमा प्रदान गर्नेवाला, दयावान छ ।

فَإِذَا قَضَيْتُمْ مَّنَاسِكَكُمْ فَاذْكُرُوا اللَّهَ كَذِكْرِكُمْ آبَاءَكُمْ أَوْ أَشَدَّ ذِكْرًا ۗ فَمِنَ النَّاسِ مَنْ يَقُولُ رَبَّنَا آتِنَا فِي الدُّنْيَا وَمَا لَهُ فِي الْآخِرَةِ مِنْ خَلَاقٍ ﴿٢٠٠﴾

२००) फेरि जब हजका सबै स्तम्भहरू पूरा गरिसकेका हुन्छौ, तब (मेनामा) अल्लाहलाई स्मरण गर, जुन किसिमले तिमीहरू आफ्ना पुर्खाहरूलाई स्मरण गर्ने गर्दथ्यौ, बरु त्योभन्दा पनि बढी । केही मानिसहरू यस्ता छन् जो कि विन्ति गर्दछन् कि हे पालनकर्ता ! हामीलाई यस संसारमा (उत्तम कुराहरू) प्रदान गर, र यस्ता मानिसहरूको लागी आखिरतमा कुनै अंश हुँदैन ।

२०१) र उनीहरूमध्य केही यस्ता छन् जो कि प्रार्थना गर्दछन् कि हे पालनकर्ता ! हामीलाई संसारमा पनि नेकी प्रदान गर, र आखिरतमा पनि पुण्य प्रदान गर र नर्कको कष्टबाट रक्षा गर्नु ।

وَمِنْهُمْ مَّنْ يَّقُوْلُ رَبَّنَآ اٰتِنَا فِى الدُّنْيَا حَسَنَةً وَّفِى الْاٰخِرَةِ حَسَنَةً وَّقِنَا عَذَابَ النَّارِ ﴿٢٠١﴾

२०२) यिनै ती मानिसहरू हुन् जसका लागि तिनीहरूको कर्मको (राम्रो) अंश छ र अल्लाहले छिट्टै त्यसको हिसाब लिनेवाला छ ।

اُولٰٓئِكَ لَهُمْ نَصِيْبٌ مِّمَّا كَسَبُوْا ۗ وَاللّٰهُ سَرِيْعُ الْحِسَابِ ﴿٢٠٢﴾

२०३) र अल्लाहको स्मरण गर, गणनाका दिनहरूमा (तीन दिन) । यदि कसैले छिटो गर्दछ (र) दुई (एघार, बाह्र) दिनमै हिंडिहाल्छ भने त्यसलाई कुनै गुनाह छैन । र जो पछि (तेह्र तारिखसम्म) बसिरहन्छन्, तिनी माथि पनि कुनै गुनाह छैन, यी त्यो मानिसको लागि हुन् जो परहेजगार होस् । अल्लाहसित डर्दै गर, र जानीराख तिमीहरू उसैछेउ जम्मा गरिने छौ ।

وَاذْكُرُوا اللّٰهَ فِىْٓ اَيَّامٍ مَّعْدُوْدٰتٍ ۗ فَمَنْ تَعَجَّلَ فِىْ يَوْمَيْنِ فَلَآ اِثْمَ عَلَيْهِ ۚ وَمَنْ تَاَخَّرَ فَلَآ اِثْمَ عَلَيْهِ ۙ لِمَنِ اتَّقٰى ۗ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ اِلَيْهِ تُحْشَرُوْنَ ﴿٢٠٣﴾

२०४) केही मानिस त यस्ता पनि छन् जसका कुरा सांसारिक जीवनको बारेमा तिमीलाई आकर्षक लाग्छ र उसले आफ्नो अन्तरात्माको कुरामाथि अल्लाहलाई साक्षी बनाउँछ, तर त्यो अत्यन्त झगडालु छ ।

وَمِنَ النَّاسِ مَنْ يُّعْجِبُكَ قَوْلُهٗ فِى الْحَيٰوةِ الدُّنْيَا وَيُشْهِدُ اللّٰهَ عَلٰى مَا فِىْ قَلْبِهٖ ۙ وَهُوَ اَلَدُّ الْخِصَامِ ﴿٢٠٤﴾

२०५) ऊ फर्केर जान्छ, तब धरतीमा उपद्रव गर्ने तथा खेतीलाई र नस्लको

وَاِذَا تَوَلّٰى سَعٰى فِى الْاَرْضِ لِيُفْسِدَ فِيْهَا وَيُهْلِكَ الْحَرْثَ وَالنَّسْلَ ۗ وَاللّٰهُ لَا يُحِبُّ الْفَسَادَ ﴿٢٠٥﴾

विनाशको प्रयासमा लागिरहन्छ । र अल्लाहलाई उपद्रव रुचाउँदैन ।

२०६) जब उसलाई भनिन्छ, कि अल्लाहसित डर, तब अहंकारले उसलाई गुनाह गर्न प्रेरित गरि दिन्छ । यस्ताका लागि नर्क नै छ र त्यो साह्रै नराम्रो ठाउँ हो ।

وَإِذَا قِيلَ لَهُ اتَّقِ اللَّهَ أَخَذَتْهُ الْعِزَّةُ بِالْإِثْمِ فَحَسْبُهُ جَهَنَّمُ وَلَبِئْسَ الْمِهَادُ ﴿٢٠٦﴾

२०७) केही मानिस यस्ता पनि छन् कि अल्लाहको प्रसन्नता प्राप्त गर्नका लागि आफ्नो ज्यान सम्म बेचिदिन्छन् । र अल्लाह आफ्ना भक्तहरू प्रति अत्यन्त दयावान् छ ।

وَمِنَ النَّاسِ مَن يَشْرِي نَفْسَهُ ابْتِغَاءَ مَرْضَاتِ اللَّهِ وَاللَّهُ رَءُوفٌ بِالْعِبَادِ ﴿٢٠٧﴾

२०८) मोमिनहरू! इस्लाममा पूर्ण रूपले प्रवेश गरिहाल र शैतानको पाइलाहरूको पछि-पछि नहिंड । ऊ तिम्रो प्रत्यक्ष शत्रु हो ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا ادْخُلُوا فِي السِّلْمِ كَافَّةً وَلَا تَتَّبِعُوا خُطُوَاتِ الشَّيْطَانِ إِنَّهُ لَكُمْ عَدُوٌّ مُّبِينٌ ﴿٢٠٨﴾

२०९) (तसर्थ) यदि तिमी स्पष्ट तर्कहरू आइसकेपछि पनि विचलित हुन्छौं त याद राख कि अल्लाह सर्वशक्तिमान र सर्वज्ञानी छ ।

فَإِن زَلَلْتُم مِّن بَعْدِ مَا جَاءَتْكُمُ الْبَيِّنَاتُ فَاعْلَمُوا أَنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٠٩﴾

२१०) के मानिसहरूलाई यस कुराको प्रतिक्षा छ कि तिनीहरू समक्ष अल्लाह आफैं बादलका छानाहरू चिरेर उतरी हालोस् र फरिश्ताहरू पनि र काम पूरा गरिहालियोस् ? र, सबै कामहरू अल्लाह कहाँ नै फर्कनेछन् ।

هَلْ يَنظُرُونَ إِلَّا أَن يَأْتِيَهُمُ اللَّهُ فِي ظُلَلٍ مِّنَ الْغَمَامِ وَالْمَلَائِكَةُ وَقُضِيَ الْأَمْرُ وَإِلَى اللَّهِ تُرْجَعُ الْأُمُورُ ﴿٢١٠﴾

२११) (हे मोहम्मद !) इस्राईलका सन्ततिसित

سَلْ بَنِي إِسْرَائِيلَ كَمْ آتَيْنَاهُم مِّنْ آيَةٍ

بَيِّنَةٍ ۗ وَمَنْ يُّبَدِّلْ نِعْمَةَ اللّٰهِ مِنْۢ بَعْدِ مَا جَآءَتْهُ فَاِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ﴿٢١١﴾

सोध कि हामीले तिनीहरूलाई कति स्पष्ट निशानीहरू प्रदान गऱ्यौं । र जुन मानिस अल्लाहको उपहार आफ्नो छेउ आईपुगेपछि परिवर्तन गर्दछ, (तब जानी राखोस्) कि अल्लाह कठोर सजाय दिनेछ ।

زُيِّنَ لِلَّذِيْنَ كَفَرُوا الْحَيٰوةُ الدُّنْيَا وَيَسْخَرُوْنَ مِنَ الَّذِيْنَ اٰمَنُوْا ۘ وَالَّذِيْنَ اتَّقَوْا فَوْقَهُمْ يَوْمَ الْقِيٰمَةِ ۗ وَاللّٰهُ يَرْزُقُ مَنْ يَّشَآءُ بِغَيْرِ حِسَابٍ ﴿٢١٢﴾

२१२) अनास्थावानहरूको निम्ति सांसारिक जीवन अत्यन्त आकर्षण पूर्ण गरिएको छ, तिनीहरूले मोमिनहरूको उपहास गर्छन्, जबकि परहेज़गारहरू कियामतका दिन तिनीहरू भन्दा श्रेष्ठ हुनेछन् । अल्लाह जसलाई चाहन्छ धेरै मात्रामा रोजी प्रदान गर्दछ ।

كَانَ النَّاسُ اُمَّةً وَّاحِدَةً ۫ فَبَعَثَ اللّٰهُ النَّبِيّٖنَ مُبَشِّرِيْنَ وَمُنْذِرِيْنَ ۪ وَاَنْزَلَ مَعَهُمُ الْكِتٰبَ بِالْحَقِّ لِيَحْكُمَ بَيْنَ النَّاسِ فِيْمَا اخْتَلَفُوْا فِيْهِ ۗ وَمَا اخْتَلَفَ فِيْهِ اِلَّا الَّذِيْنَ اُوْتُوْهُ مِنْۢ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنٰتُ بَغْيًاۢ بَيْنَهُمْ ۚ فَهَدَى اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا لِمَا اخْتَلَفُوْا فِيْهِ مِنَ الْحَقِّ بِاِذْنِهٖ ۗ وَاللّٰهُ يَهْدِيْ مَنْ يَّشَآءُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٢١٣﴾

२१३) (सबै) मानिसहरू एउटै सम्प्रदायका थिए । अल्लाहले शुभ सन्देश दिन र भय सुनाउन सन्देशवाहकहरू पठायो, र तिनीहरूमाथि सच्चा ग्रन्थहरू उताऱ्यो जसबाट मानिसहरू बीचका सबै विवादहरूको निर्णय हुन सकोस् ! र, यसमा विवाद पनि आपसी शत्रुता र डाहका कारणले तिनै मानिसहरूले खडा गरे जसलाई किताब प्रदान गरिएको थियो, तिनीहरूसम्म स्पष्ट तर्कहरू आइसके पछि पनि विवाद उठाए । यसको लागि अल्लाहले आफ्नो इच्छा अनुसार त्यस विवादमा पनि मोमिनहरूलाई सत्यमार्ग तर्फ मार्ग दर्शन गऱ्यो र अल्लाह जसलाई

चाहन्छ सोझो बाटो देखाई दिन्छ ।

أَمْ حَسِبْتُمْ أَنْ تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَأْتِكُمْ مَثَلُ الَّذِينَ خَلَوْا مِنْ قَبْلِكُمْ ۖ مَسَّتْهُمُ الْبَأْسَاءُ وَالضَّرَّاءُ وَزُلْزِلُوا حَتَّىٰ يَقُولَ الرَّسُولُ وَالَّذِينَ آمَنُوا مَعَهُ مَتَىٰ نَصْرُ اللَّهِ ۗ أَلَا إِنَّ نَصْرَ اللَّهِ قَرِيبٌ ﴿٢١٤﴾

२१४) के तिमी यस भ्रममा छौ कि स्वर्गमा पुगिहाल्छौ, जबकि तिमीलाई अहिलेसम्म पहिलेका मानिसहरूको जस्तो अवस्था आएकै छैन । तिनीहरूलाई (ठूला) कठिनाई र दुःख भोग्ने भयले कंपाइयो र तिनीहरूलाई यति सम्म सताइयो कि रसूल र उहाँका साथीहरूले भन्न थाले कि अल्लाहको मद्दत कहिले आँउला । हेर ! अल्लाहको सहायता एकदम नजिक छ ।

يَسْأَلُونَكَ مَاذَا يُنْفِقُونَ ۖ قُلْ مَا أَنْفَقْتُمْ مِنْ خَيْرٍ فَلِلْوَالِدَيْنِ وَالْأَقْرَبِينَ وَالْيَتَامَىٰ وَالْمَسَاكِينِ وَابْنِ السَّبِيلِ ۗ وَمَا تَفْعَلُوا مِنْ خَيْرٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٢١٥﴾

२१५) तपाईसंग सोध्छन् कि कुन किसिमको सम्पत्ति खर्च गरुन् । तपाई भनिदिनुस् कि जुन धन तिमी खर्च गर्नेछौं त्यो आमा-बाबु, नजिकका नातेदार, अनाथ, गरीब र मुसाफिरहरूको लागि छ । र जुन उपकार तिमीले गर्नेछौ, निःसन्देह त्यो अल्लाहलाई थाहा छ ।

كُتِبَ عَلَيْكُمُ الْقِتَالُ وَهُوَ كُرْهٌ لَكُمْ ۖ وَعَسَىٰ أَنْ تَكْرَهُوا شَيْئًا وَهُوَ خَيْرٌ لَكُمْ ۖ وَعَسَىٰ أَنْ تُحِبُّوا شَيْئًا وَهُوَ شَرٌّ لَكُمْ ۗ وَاللَّهُ يَعْلَمُ وَأَنْتُمْ لَا تَعْلَمُونَ ﴿٢١٦﴾

२१६) तिमीहरूमाथि धर्म-युद्ध गर्नु अनिवार्य गरिएको छ, त्यो तिमीलाई कठिन लाग्न सक्छ । सम्भव छ तिमीलाई कुनै कुरा नराम्रो लागोस् तर वास्तवमा तिम्रो लागि त्यो हितकर हुनेछ, र यो पनि सम्भव छ कि तिमीले कुनै कुरालाई राम्रो सम्झ तर तिम्रो निम्ति त्यो हानिकारक हुनेछ । (यी

कुराहरूको) वास्तविकताको जानकारी अल्लाहलाई छ तिमीहरू बुझ्दैनौ ।

يَسْـَٔلُوْنَكَ عَنِ الشَّهْرِ الْحَرَامِ قِتَالٍ فِيْهِ ۗ قُلْ قِتَالٌ فِيْهِ كَبِيْرٌ ۗ وَصَدٌّ عَنْ سَبِيْلِ اللّٰهِ وَكُفْرٌۢ بِهٖ وَالْمَسْجِدِ الْحَرَامِ ۗ وَاِخْرَاجُ اَهْلِهٖ مِنْهُ اَكْبَرُ عِنْدَ اللّٰهِ ۚ وَالْفِتْنَةُ اَكْبَرُ مِنَ الْقَتْلِ ۗ وَلَا يَزَالُوْنَ يُقَاتِلُوْنَكُمْ حَتّٰى يَرُدُّوْكُمْ عَنْ دِيْنِكُمْ اِنِ اسْتَطَاعُوْا ۗ وَمَنْ يَّرْتَدِدْ مِنْكُمْ عَنْ دِيْنِهٖ فَيَمُتْ وَهُوَ كَافِرٌ فَاُولٰٓئِكَ حَبِطَتْ اَعْمَالُهُمْ فِى الدُّنْيَا وَالْاٰخِرَةِ ۚ وَاُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢١٧﴾

२१७) मानिसहरू तपाईसित युद्ध निषेधित महीनाहरूमा युद्धको सम्बन्धमा सोध्छन् । तपाई भनिदिनुस् कि यिनमा युद्ध गर्नु ठूलो पाप हो । तर अल्लाहको मार्गबाट रोक्नु, त्योसित कुफ्र गर्नु र मस्जिदे हराम (खान-ए-कअ्‌वा) मा जानबाट मनाही गर्नु र त्यहाँ बस्नेहरूलाई त्यहाँबाट निस्कासित गर्नु अल्लाहको सामु त्यो भन्दा ठूलो पाप हो । तथा फित्ना (उपद्रव) रक्तपात भन्दा पनि ठूलो अपराध हो । यी मानिसहरू सधैं तिमीसित लडाई झगडा गर्दैरहने छन्, यहाँसम्मकि यदि क्षमता भएको खण्डमा तिमीलाई तिम्रो धर्मबाट विचलित पनि गराइदिन्छन् । र तिमीहरू मध्येबाट जुन मानिस आफ्नो धर्मबाट विचलित भई अनास्थावान हुन पुग्दछन् र सोही अवस्थामा मर्दछन्, त यस्ता मानिसहरूका साँसारिक र परलौकिक सबै कर्महरू नष्ट भएर जाने छन् र यी मानिसहरू नर्कका बासी हुनेछन्, जसमा सधैं रहने छन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَالَّذِيْنَ هَاجَرُوْا وَجٰهَدُوْا فِىْ سَبِيْلِ اللّٰهِ ۙ اُولٰٓئِكَ يَرْجُوْنَ رَحْمَتَ اللّٰهِ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢١٨﴾

२१८) हो आस्था ल्याउनेहरू, र अल्लाहको मार्गमा आफ्नो घर-देश छोडी जानेहरू र अल्लाहको मार्गमा जेहाद

(धर्म-युद्ध) गर्नेहरू अल्लाहको कृपाको हकदार हुन् । अल्लाह अत्यन्त क्षमा गर्नेवाला दयावान हो ।

२१९) (हे पैगम्बर स.) मानिसहरूले मदिरा र जुवाका कानूनको सम्बन्धमा सोध्छन् । भनिदिनुस् ठूला पाप कर्महरू हुन् र मानिसहरूका लागि यिनबाट केही सांसारिक फाइदा पनि छन्, तर तिनका हानिहरू(पाप) फाइदाभन्दा धेरै ठूला छन् । यो पनि तपाईसित सोध्छन् कि अल्लाहको मार्गमा कुन सम्पति खर्च गरुन् ? तपाई भनिदिनुस् कि (जुन माल) आवश्यकता भन्दा बढी छ । यसप्रकार, अल्लाह आफ्ना आदेशहरू स्पष्ट रूपमा तिम्रो लागि वर्णन गर्दछ ताकि तिमीहरू सम्झने बुझ्ने गर ।

يَسْـَٔلُوْنَكَ عَنِ الْخَمْرِ وَالْمَيْسِرِؕ قُلْ فِيْهِمَآ اِثْمٌ كَبِيْرٌ وَّمَنَافِعُ لِلنَّاسِ وَاِثْمُهُمَآ اَكْبَرُ مِنْ نَّفْعِهِمَاؕ وَيَسْـَٔلُوْنَكَ مَاذَا يُنْفِقُوْنَ ؕ قُلِ الْعَفْوَؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَتَفَكَّرُوْنَ ﴿٢١٩﴾

२२०) दुनियाँ र परलोकका कुराको सम्बन्धमा, र अनाथहरूको बारेमा पनि सोध्छन्, तपाई भनिदिनुस् कि जसमा तिनीहरूको (आर्थिक) सुधार होस्, त्यो नै राम्रो छ । तिमीहरूले उनीहरूको माल आफ्नो मालसंग भण्डारण गर्नुमा पनि केही हर्ज छैन । किनभने तिनी तिम्रा दाजुभाइहरू हुन् । असल नीयत र बदनीयतलाई अल्लाह राम्ररी बुझ्दछ । यदि अल्लाहले चाहेको भए तिमीलाई कष्टमा पार्न

فِى الدُّنْيَا وَالْاٰخِرَةِؕ وَيَسْـَٔلُوْنَكَ عَنِ الْيَتٰمٰىؕ قُلْ اِصْلَاحٌ لَّهُمْ خَيْرٌؕ وَاِنْ تُخَالِطُوْهُمْ فَاِخْوَانُكُمْؕ وَاللّٰهُ يَعْلَمُ الْمُفْسِدَ مِنَ الْمُصْلِحِؕ وَلَوْ شَآءَ اللّٰهُ لَاَعْنَتَكُمْؕ اِنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ ﴿٢٢٠﴾

सक्दथ्यो । निःसन्देह अल्लाह सक्षम र सर्वशक्ति सम्पन्न छ ।

२२१) (मोमिनहरू!) अनास्थावान स्त्रीलाई पत्नी नबनाउनु (विवाह नगर्नु) जबसम्म कि तिनी आस्थावान हुँदैनन् । किनभने आस्थावान दासी पनि अनास्थावान स्वतन्त्र स्त्री भन्दा उत्तम हुन्छे, तिमीलाई अनास्थावान स्त्री राम्री लागे पनि, र मुशिरक लोग्ने मान्छे, जबसम्म कि अल्लाह माथि ईमान ल्याउँदैन, उससंग आफ्ना मोमिना (मुस्लिम आइमाईहरू)को विवाह नगर्नु । किनभने मुशिरक लोग्ने, तिमीलाई चाहे जति राम्रो लागे पनि, त्यो भन्दा मोमिन दास राम्रो छ । यिनीहरू नर्कतिर निम्त्याउँछन् र अल्लाह स्वर्ग र आफ्नो उपकार तिर आफ्नो आदेशले बोलाउँदछ र आफ्नो आदेश मानिसहरूसित खुलस्त रूपमा वर्णन गर्दछ ताकि उनीहरू सही चेतना प्राप्त गर्न सकुन् ।

وَلَا تَنْكِحُوا الْمُشْرِكٰتِ حَتّٰى يُؤْمِنَّ ۭ وَلَاَمَةٌ مُّؤْمِنَةٌ خَيْرٌ مِّنْ مُّشْرِكَةٍ وَّلَوْ اَعْجَبَتْكُمْ ۚ وَلَا تُنْكِحُوا الْمُشْرِكِيْنَ حَتّٰى يُؤْمِنُوْا ۭ وَلَعَبْدٌ مُّؤْمِنٌ خَيْرٌ مِّنْ مُّشْرِكٍ وَّلَوْ اَعْجَبَكُمْ ۭ اُولٰۗىِٕكَ يَدْعُوْنَ اِلَى النَّارِ ښ وَاللّٰهُ يَدْعُوْٓا اِلَى الْجَنَّةِ وَالْمَغْفِرَةِ بِاِذْنِهٖ ۚ وَيُبَيِّنُ اٰيٰتِهٖ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٢٢١﴾

२२२) तपाईसित रजस्वला बारे सोध्छन् । भनिदिनु कि त्यो (रक्त) अपवित्र हो । तसर्थ रजस्वलाको समयमा स्वास्नीबाट अलग रहनु र जबसम्म तिनीहरू पवित्र हुँदैनन्, तिनको नजिक (सम्भोगका लागी) नजानु । हो, जब तिनी पवित्र हुन्छन्, तब

وَيَسْـَٔـلُوْنَكَ عَنِ الْمَحِيْضِ ۭ قُلْ هُوَ اَذًى ۙ فَاعْتَزِلُوا النِّسَاۗءَ فِي الْمَحِيْضِ ۙ وَلَا تَقْرَبُوْھُنَّ حَتّٰى يَطْهُرْنَ ۚ فَاِذَا تَطَهَّرْنَ فَاْتُوْھُنَّ مِنْ حَيْثُ اَمَرَكُمُ اللّٰهُ ۭ اِنَّ اللّٰهَ يُحِبُّ التَّوَّابِيْنَ وَيُحِبُّ الْمُتَطَهِّرِيْنَ ﴿٢٢٢﴾

तिमी उनको नजिक जाऊ जुन ठाउँबाट अल्लाहले तिमीलाई जाने आदेश गरेको छ। निःसन्देह अल्लाह क्षमा याचना गर्नेलाई र पवित्र रहनेलाई प्रेम गर्दछ।

२२३) तिम्रा स्वास्नीहरू तिम्रा खेती हुन्, तसर्थ आफ्ना खेतीमा जुन तरिकाले चाहन्छौं, जाऊ र आफ्ना निम्ति नेक कर्म अगाडि पठाऊ र अल्लाहसित डर मान्ने गर र जानी राख कि (एकदिन) तिमीहरू उसलाई भेट्ने छौ। र आस्थावानहरूलाई शुभ सन्देश सुनाइदिनु।

نِسَآؤُكُمْ حَرْثٌ لَّكُمْ فَأْتُوا حَرْثَكُمْ اَنّٰى شِئْتُمْ وَقَدِّمُوا لِاَنْفُسِكُمْ وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّكُمْ مُّلٰقُوْهُ وَبَشِّرِ الْمُؤْمِنِيْنَ ﴿٢٢٣﴾

२२४) र अल्लाहलाई आफ्ना शपथहरूका निशाना नबनाऊ जसबाट (तिमी) भलाई, असल आचरण र मानिसहरू बीचको मेलमिलापलाई छोडी दिन्छौ। र अल्लाह प्रत्येक कुरा सुन्ने र जान्नेवाला छ।

وَلَا تَجْعَلُوا اللّٰهَ عُرْضَةً لِّاَيْمَانِكُمْ اَنْ تَبَرُّوْا وَتَتَّقُوْا وَتُصْلِحُوْا بَيْنَ النَّاسِ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٢٤﴾

२२५) अल्लाह अपरिपक्व शपथको कारण तिमीहरूलाई समात्दैन तर जुन शपथ जानीबुझी खान्छौं, त्यसको पकड गर्ने छ। र अल्लाह परम् क्षमाशील अति सहनशील छ।

لَا يُؤَاخِذُكُمُ اللّٰهُ بِاللَّغْوِ فِيْٓ اَيْمَانِكُمْ وَلٰكِنْ يُّؤَاخِذُكُمْ بِمَا كَسَبَتْ قُلُوْبُكُمْ وَاللّٰهُ غَفُوْرٌ حَلِيْمٌ ﴿٢٢٥﴾

२२६) जुन मानिसहरू आफ्ना स्वास्नीहरूसित तिनीहरूसंग सम्बन्ध नराख्ने शपथ खान्छन्, तिनीहरूलाई अधिकतम् चार महिनासम्मको

لِلَّذِيْنَ يُؤْلُوْنَ مِنْ نِّسَآئِهِمْ تَرَبُّصُ اَرْبَعَةِ اَشْهُرٍ فَاِنْ فَآءُوْ فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٢٦﴾

अवधि छ, फेरि यदि अवधिपछि तिनी फर्कन्छन् भने निःसन्देह अल्लाह क्षमादान गर्ने दयावान् छ ।

२२७) र, यदि तलाक (सम्बन्ध विच्छेद) कै निश्चय गरिहाल्छन्, भने अल्लाह सुन्ने र जान्नेवाला छ ।

وَإِنْ عَزَمُوا الطَّلَاقَ فَإِنَّ اللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿٢٢٧﴾

२२८) र तलाक प्राप्त स्वास्नी मानिसले आफूलाई तीन पटक रजस्वलासम्म रोकिराखुन् । तिनीहरूका लागि यो इजाजत छैन कि जे तिनको गर्भमा अल्लाहले सृष्टि गरेको छ त्यसलाई लुकाउन् यदि तिनीहरूलाई अल्लाह र कयामतको दिन माथि आस्था छ र तिनका पतिहरू यस अवधिमा तिनलाई फर्काउन चाहन्छन् भने तिनीहरूले तिनलाई आफ्नो पत्नीत्वमा फिर्ता लिन पूरा हकदार छन्, यदि उनीहरू समझदारी गर्न चाहन्छन् । र, नियमानुसार स्वास्नीलाई पुरुषहरूमाथि अधिकार उस्तै छ जस्तो पुरुषहरूलाई स्वास्नीहरूमाथि छ । र, अल्लाह सर्वशक्तिमान र सर्वज्ञान सम्पन्न छ ।

وَالْمُطَلَّقَاتُ يَتَرَبَّصْنَ بِأَنْفُسِهِنَّ ثَلَاثَةَ قُرُوءٍ ۚ وَلَا يَحِلُّ لَهُنَّ أَنْ يَكْتُمْنَ مَا خَلَقَ اللَّهُ فِي أَرْحَامِهِنَّ إِنْ كُنَّ يُؤْمِنَّ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ ۚ وَبُعُولَتُهُنَّ أَحَقُّ بِرَدِّهِنَّ فِي ذَٰلِكَ إِنْ أَرَادُوا إِصْلَاحًا ۚ وَلَهُنَّ مِثْلُ الَّذِي عَلَيْهِنَّ بِالْمَعْرُوفِ ۚ وَلِلرِّجَالِ عَلَيْهِنَّ دَرَجَةٌ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٢٢٨﴾

२२९) यी तलाकहरू दुई पटक गर्न सकिन्छ त्यसपश्चात या त तिनीहरूलाई (स्वास्नीलाई) राम्रो तरिकाले (पत्नीत्वमा) राख्नु अथवा सदव्यवहारको साथ विदा गर्नु र

الطَّلَاقُ مَرَّتَانِ ۖ فَإِمْسَاكٌ بِمَعْرُوفٍ أَوْ تَسْرِيحٌ بِإِحْسَانٍ ۗ وَلَا يَحِلُّ لَكُمْ أَنْ تَأْخُذُوا مِمَّا آتَيْتُمُوهُنَّ شَيْئًا إِلَّا أَنْ يَخَافَا أَلَّا يُقِيمَا حُدُودَ اللَّهِ ۖ فَإِنْ خِفْتُمْ أَلَّا يُقِيمَا حُدُودَ اللَّهِ فَلَا جُنَاحَ عَلَيْهِمَا فِيمَا افْتَدَتْ

بِهٖ ؕ تِلْكَ حُدُوْدُ اللّٰهِ فَلَا تَعْتَدُوْهَا ۚ وَمَنْ يَّتَعَدَّ حُدُوْدَ اللّٰهِ فَاُولٰٓئِكَ هُمُ الظّٰلِمُوْنَ ﴿٢٢٩﴾

यो अनुचित छ कि जुन कुरा तिमीले तिनीहरूलाई दिसकेका छौ, त्यसमध्ये केही फिर्ता लिनु । हो ! यो आर्कै कुरा हो कि दुवैलाई अल्लाहबाट निर्धारित गरिएका सीमाहरूको पालना नगर्न सक्ने संभावनाबाट डर होओस् । यसर्थ यदि तिमीहरूलाई यो डर छ कि अल्लाहद्वारा निर्धारित सीमा कायम राख्न सक्दैनन् भने पत्नीले (पतिबाट) मुक्त हुन पाएको बदला केही दिनुमा दुवैलाई कुनै पाप लाग्दैन । यी अल्लाहबाट निर्धारित गरिएका सीमाहरू हुन्, खबरदार ! तिनीभन्दा बाहिर नजानु र जुन मानिसहरू अल्लाहका सीमाहरू उल्लंघन गर्छन्, तिनीहरू अत्याचारी हुन् ।

فَاِنْ طَلَّقَهَا فَلَا تَحِلُّ لَهٗ مِنْۢ بَعْدُ حَتّٰى تَنْكِحَ زَوْجًا غَيْرَهٗ ؕ فَاِنْ طَلَّقَهَا فَلَا جُنَاحَ عَلَيْهِمَآ اَنْ يَّتَرَاجَعَآ اِنْ ظَنَّآ اَنْ يُّقِيْمَا حُدُوْدَ اللّٰهِ ؕ وَتِلْكَ حُدُوْدُ اللّٰهِ يُبَيِّنُهَا لِقَوْمٍ يَّعْلَمُوْنَ ﴿٢٣٠﴾

२३०) फेरि यदि पतिले तेस्रो पटक तलाक दिन्छ भने त्यसपछि जबसम्म ती स्वास्नी मानिसले कुनै अर्को मानिससँग विवाह न गरिहालोस् । पहिलो पतिको निम्ति स्वीकार्य हुँदैन । र यदि दोस्रो पतिले पनि (आफ्नो इच्छाले) तलाक दिन्छ भने स्वास्नी र उसको पहिलो पतिले पुनर्विवाह गर्न सक्दछन्, यसमा दुवैमाथि कुनै गुनाह छैन, यस शर्तमा कि दुवैलाई विश्वास होस् कि अल्लाहका सीमाहरू

कायम राख्न सक्ने छन् । यी अल्लाहका सीमाहरू हुन्, जसलाई उसले जान्न चाहने मानिसहरूको निम्ति वर्णन गर्दछ ।

وَإِذَا طَلَّقْتُمُ النِّسَاءَ فَبَلَغْنَ أَجَلَهُنَّ
فَأَمْسِكُوهُنَّ بِمَعْرُوفٍ أَوْ سَرِّحُوهُنَّ
بِمَعْرُوفٍ ۚ وَلَا تُمْسِكُوهُنَّ ضِرَارًا
لِّتَعْتَدُوا ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ فَقَدْ ظَلَمَ
نَفْسَهُ ۚ وَلَا تَتَّخِذُوا آيَاتِ اللَّهِ هُزُوًا ۚ
وَاذْكُرُوا نِعْمَتَ اللَّهِ عَلَيْكُمْ وَمَا أَنزَلَ
عَلَيْكُم مِّنَ الْكِتَابِ وَالْحِكْمَةِ يَعِظُكُم بِهِ ۚ
وَاتَّقُوا اللَّهَ وَاعْلَمُوا أَنَّ اللَّهَ بِكُلِّ شَيْءٍ
عَلِيمٌ ﴿٢٣١﴾

२३१) जब तिमीले स्वास्नीलाई तलाक दिइसकेका हुन्छौं र तिनीहरूको इद्दत पूरा भइसकेको छ भने तिनीहरूलाई या त न्यायोचित व्यवहारले निकाह अर्न्तगत नै रहन देऊ अथवा पूर्ण भद्रताका साथ बिदाई दिइहाल र अलमलमा पार्ने नीयतले तिनीहरूलाई निकाहमा नराख । जसले यस्तो गर्दछ, उसले आफैमाथि अन्याय गरेको हुन्छ । तिमीहरूले अल्लाहका आदेशहरूलाई हाँसो र ठट्टा नबनाऊ, र अल्लाहको तिमीहरूमाथि जुन उपकार छ, त्यसलाई स्मरण गर र तिमीलाई जे जति किताब र बुद्धिमानीका कुराहरू उसले प्रदान गरेको छ, जसबाट यस्तै तिमीलाई मार्ग दर्शन गरि रहन्छ, तिनलाई पनि स्मरण गर र अल्लाहसित डर मान्ने गर, र जानीराख कि अल्लाह हरेक कुरो जान्दछ ।

وَإِذَا طَلَّقْتُمُ النِّسَاءَ فَبَلَغْنَ أَجَلَهُنَّ
فَلَا تَعْضُلُوهُنَّ أَن يَنكِحْنَ أَزْوَاجَهُنَّ إِذَا
تَرَاضَوْا بَيْنَهُم بِالْمَعْرُوفِ ۗ ذَٰلِكَ
يُوعَظُ بِهِ مَن كَانَ مِنكُمْ يُؤْمِنُ بِاللَّهِ
وَالْيَوْمِ الْآخِرِ ۗ ذَٰلِكُمْ أَزْكَىٰ لَكُمْ وَأَطْهَرُ

२३२) र जब तिमीहरू आफ्ना पत्नीहरूलाई तलाक दिइसकेका हुन्छौं र तिनीहरूको इद्दत पूरा भइसकेको छ भने तिनीहरूलाई उनको पतिसँग, निकाह गर्नबाट नरोक

وَاللّٰهُ يَعْلَمُ وَاَنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٢٣٢﴾

यदि तिनीहरू जायज तरिकाले त्यसो गर्दछन् । यो उपदेश तिमीहरूमध्ये त्यस्तो व्यक्तिको लागि हो । जसले अल्लाह र आखिरतको दिनमा विश्वास राख्दछ । यो तिम्रो निम्ति अत्यन्त राम्रो एवम् अति पवित्रताको कुरो हो । अल्लाह जान्दछ, (जुन) तिमी जान्दैनौ ।

وَالْوَالِدٰتُ يُرْضِعْنَ اَوْلَادَهُنَّ حَوْلَيْنِ كَامِلَيْنِ
لِمَنْ اَرَادَ اَنْ يُّتِمَّ الرَّضَاعَةَ ۚ وَعَلَى الْمَوْلُوْدِ لَهٗ
رِزْقُهُنَّ وَكِسْوَتُهُنَّ بِالْمَعْرُوْفِ ۚ لَا تُكَلَّفُ نَفْسٌ اِلَّا
وُسْعَهَا ۚ لَا تُضَآرَّ وَالِدَةٌۢ بِوَلَدِهَا وَلَا مَوْلُوْدٌ لَّهٗ
بِوَلَدِهٖ ۚ وَعَلَى الْوَارِثِ مِثْلُ ذٰلِكَ ۚ فَاِنْ اَرَادَا
فِصَالًا عَنْ تَرَاضٍ مِّنْهُمَا وَتَشَاوُرٍ فَلَا جُنَاحَ
عَلَيْهِمَا ۗ وَاِنْ اَرَدْتُّمْ اَنْ تَسْتَرْضِعُوْٓا اَوْلَادَكُمْ فَلَا
جُنَاحَ عَلَيْكُمْ اِذَا سَلَّمْتُمْ مَّآ اٰتَيْتُمْ بِالْمَعْرُوْفِ ۗ
وَاتَّقُوا اللّٰهَ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿٢٣٣﴾

२३३) आमाहरूले आफ्ना बच्चाहरूलाई पूरै दुई वर्षसम्म दूध ख्वाउनु पर्छ यो (आदेश) उसको लागि हो जसले कि पूरै अवधिसम्म दूध ख्वाउन चाहन्छ र दूध ख्वाउने आमाहरूको खाना र लुगाहरू दस्तूर अनुसार उसको (बाबुको) जिम्मामा हुनेछ । प्रत्येक व्यक्तिलाई त्यत्तिकै कष्ट दिइन्छ जति सहन सक्ने उसको क्षमता छ । न त आमालाई उसको बच्चाको कारण न त बाबुलाई उसको सन्तानको कारण कुनै दु:ख दिइयोस् । उत्तराधिकारी माथि पनि यस्तै किसिमको जिम्मेवारी छ र यदि आमा-बाबु दुवै आपसमा सर-सल्लाह र सहमतिबाट बच्चाहरूको दूध छोडाउन चाहन्छन्, तब तिनीहरूलाई कुनै गुनाह छैन र यदि तिमीहरूले (आमा-बाबु) आफ्ना सन्तानहरूलाई (अरुबाट)

दूध ख्वाउन चाहन्छौं भने पनि तिमीलाई कुनै पाप लाग्दैन, यदि तिमीले दूध ख्वाउनेहरूलाई दस्तूर अनुसार तिनको निर्धारित हक दिन्छौ । अल्लाहसँग डर मान्ने गर र जानीराख कि, अल्लाहले तिम्रो काम देखिराखेको छ ।

२३४) र तिमीहरूमध्ये जुन मानिसहरू मर्छन् र (आफ्ना पछाडि) स्वास्नीहरू छोड्छन् भने ती स्वास्नीहरूले चार महिना दश दिनसम्म आफूलाई रोकी राखुन् । र जब (यी) इद्दत पूरा गरिसकेका हुन्छन् तब आफ्ना हितमा जे चाहन्छन् गर्छन भने यसमा तिमीलाई कुनै गुनाह छैन र अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापको जानकारी राख्दछ ।

وَالَّذِينَ يُتَوَفَّوْنَ مِنكُمْ وَيَذَرُونَ أَزْوَاجًا يَتَرَبَّصْنَ بِأَنفُسِهِنَّ أَرْبَعَةَ أَشْهُرٍ وَعَشْرًا ۖ فَإِذَا بَلَغْنَ أَجَلَهُنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ فِيمَا فَعَلْنَ فِي أَنفُسِهِنَّ بِالْمَعْرُوفِ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٣٤﴾

२३५) यदि तिमी सांकेतिक तरिकाबाट ती स्वास्नीहरूलाई निकाहको सन्देश पठाउँछौं अथवा आफ्ना हृदयमा लुकाएर राख्दछौं भने तिमीलाई कुनै गुनाह छैन । अल्लाहलाई थाहा छ कि तिमीले तिनीहरूसित (निकाहको) चर्चा गर्नेछौं । तर गोप्य रूपमा कुनै वाचा नगर्नु । र तिमीले राम्रो कुरा बोल्ने गर र जबसम्म इद्दतको अवधि पूरा हुँदैन । निकाहको दृढ अठोट नगर्नु । जानिराख कि, जे जति तिम्रा

وَلَا جُنَاحَ عَلَيْكُمْ فِيمَا عَرَّضْتُم بِهِ مِنْ خِطْبَةِ النِّسَاءِ أَوْ أَكْنَنتُمْ فِي أَنفُسِكُمْ ۚ عَلِمَ اللَّهُ أَنَّكُمْ سَتَذْكُرُونَهُنَّ وَلَٰكِن لَّا تُوَاعِدُوهُنَّ سِرًّا إِلَّا أَن تَقُولُوا قَوْلًا مَّعْرُوفًا ۚ وَلَا تَعْزِمُوا عُقْدَةَ النِّكَاحِ حَتَّىٰ يَبْلُغَ الْكِتَابُ أَجَلَهُ ۚ وَاعْلَمُوا أَنَّ اللَّهَ يَعْلَمُ مَا فِي أَنفُسِكُمْ فَاحْذَرُوهُ ۚ وَاعْلَمُوا أَنَّ اللَّهَ غَفُورٌ حَلِيمٌ ﴿٢٣٥﴾

हृदयहरूमा छन्, अल्लाहलाई सबै थाहा छ, तसर्थ उससँग डर मान्ने गर र यो पनि जानिराख कि अल्लाह क्षमा प्रदान गर्नेवाला दयावान छ ।

لَا جُنَاحَ عَلَيْكُمْ إِنْ طَلَّقْتُمُ النِّسَآءَ مَا لَمْ
تَمَسُّوهُنَّ أَوْ تَفْرِضُوا لَهُنَّ فَرِيضَةً ۚ وَمَتِّعُوهُنَّ
عَلَى الْمُوسِعِ قَدَرُهُ وَعَلَى الْمُقْتِرِ قَدَرُهُ ۚ مَتَاعًا
بِالْمَعْرُوفِ ۖ حَقًّا عَلَى الْمُحْسِنِينَ ﴿٢٣٦﴾

२३६) यदि तिमीले स्वास्नी मानिसहरूलाई तिनीहरूसँग समागम गर्नु र महर निर्धारित गर्नु अघि नै तलाक दिन्छौ भने तिमीमाथि कुनै गुनाह छैन, हो उनलाई केही उचित रकम अवश्य देऊ (अर्थात) सम्पन्नले आफ्नो सामर्थ्य अनुसार देओस् र अभावग्रस्तले आफ्नो हैसियत अनुरूप । भलाई गर्ने मानिसहरूको निम्ति यो एउटा अनिवार्यता हो ।

وَإِنْ طَلَّقْتُمُوهُنَّ مِنْ قَبْلِ أَنْ تَمَسُّوهُنَّ وَقَدْ
فَرَضْتُمْ لَهُنَّ فَرِيضَةً فَنِصْفُ مَا فَرَضْتُمْ إِلَّآ
أَنْ يَعْفُونَ أَوْ يَعْفُوَا الَّذِي بِيَدِهِ عُقْدَةُ
النِّكَاحِ ۚ وَأَنْ تَعْفُوٓا أَقْرَبُ لِلتَّقْوَىٰ ۚ وَلَا تَنْسَوُا
الْفَضْلَ بَيْنَكُمْ ۚ إِنَّ اللَّهَ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٢٣٧﴾

२३७) र, यदि तिमीले स्वास्नीहरूलाई समागम गर्नु अगाडि तलाक दिन्छौ, तर महर निश्चित गरिसकेका छौं भने निर्धारित रकमको आधा दिइहाल्नु । हो, यदि स्वास्नीहरूले महरको रकम माफ गर्दछिन् अथवा जसको हातमा विवाह बन्धन छ उसले छाडिदेओस् । र यदि तिमी पुरुषहरू नै आफ्ना अधिकार छाडिदिन्छौं, भने यो आत्म-संयमको कुरा हो । पारस्परिक सदभाव र भलो गर्न न बिर्सनु । निःसन्देह अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलाप देखिराखेको छ ।

حَافِظُوا عَلَى الصَّلَوٰتِ وَالصَّلَوٰةِ الْوُسْطَىٰ وَقُومُوا لِلَّهِ قَانِتِينَ ﴿٢٣٨﴾

२३८) सबै नमाजहरू विशेष गरी बीचको नमाज सुचारु रूपले सम्पन्न गर्दै गर र अल्लाहको अगाडि आदर साथ उभिने गर ।

فَإِنْ خِفْتُمْ فَرِجَالًا أَوْ رُكْبَانًا ۖ فَإِذَا أَمِنتُمْ فَاذْكُرُوا اللَّهَ كَمَا عَلَّمَكُم مَّا لَمْ تَكُونُوا تَعْلَمُونَ ﴿٢٣٩﴾

२३९) यदि तिमी भयको अवस्थामा छौं भने पैदल वा सवारीको अवस्थामा नै (नमाज पढिहाल) । र जब सामान्य अवस्थामा हुन्छौ तब अल्लाहको स्मरण गर, जसरी अल्लाहले तिमीलाई सिकाएको छ, जुनकि तिमी जान्दैनथ्यौ ।

وَالَّذِينَ يُتَوَفَّوْنَ مِنكُمْ وَيَذَرُونَ أَزْوَاجًا وَصِيَّةً لِّأَزْوَاجِهِم مَّتَاعًا إِلَى الْحَوْلِ غَيْرَ إِخْرَاجٍ ۚ فَإِنْ خَرَجْنَ فَلَا جُنَاحَ عَلَيْكُمْ فِي مَا فَعَلْنَ فِي أَنفُسِهِنَّ مِن مَّعْرُوفٍ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٢٤٠﴾

२४०) तिमीहरूमध्ये जो मर्दछन् र आफ्ना पछाडि स्वास्नीहरू छाड्छन्, तिनले आफ्ना स्वास्नीहरूको लागि हकको निम्ति वसीयत (इच्छापत्र) गरेर जाऊन, जसबाट तिनका स्वास्नीहरूले एक वर्षसम्म फाइदा उठाउन र घरबाट कसैले तिनलाई निस्कासित न गरोस् । हो, यदि तिनीहरू आफैं घरबाट जान्छिन् र आफ्नो हितमा चाहेको काम गर्दछिन् भने यसमा तिमीलाई कुनै गुनाह हुँदैन । अल्लाह सर्वशक्तिमान र सर्वबुद्धि सम्पन्न छ ।

وَلِلْمُطَلَّقَاتِ مَتَاعٌ بِالْمَعْرُوفِ ۖ حَقًّا عَلَى الْمُتَّقِينَ ﴿٢٤١﴾

२४१) तलाक प्राप्त स्वास्नीहरूलाई राम्रोसित फाइदा दिनु आत्मसंयमीहरूको निम्ति अनिवार्य छ ।

كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمْ آيَاتِهِ لَعَلَّكُمْ تَعْقِلُونَ ﴿٢٤٢﴾

२४२) यसै प्रकार अल्लाह आफ्ना निर्देशहरू तिम्रो लागि व्यक्त गर्दैछ

ताकि तिमी बुझ्नसक ।

२४३) के तिमीले तिनीहरूलाई देखेनौ जो हजारौं थिए र मृत्युको भयले आफ्ना घरहरू छाडी भागेका थिए । अल्लाहले तिनलाई मर्न आदेश दियो फेरि तिनीहरूलाई जीवित पा-यो । कुनै शकां छैन कि मानिसहरूमाथि अल्लाहले कृपा-भाव राख्दछ, तर धेरै जसो कृतज्ञ हुँदैनन् ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ خَرَجُوا مِن دِيَارِهِمْ وَهُمْ أُلُوفٌ
حَذَرَ الْمَوْتِ فَقَالَ لَهُمُ اللَّهُ مُوتُوا ثُمَّ أَحْيَاهُمْ ۚ إِنَّ
اللَّهَ لَذُو فَضْلٍ عَلَى النَّاسِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ
لَا يَشْكُرُونَ ﴿٢٤٣﴾

२४४) अल्लाहको मार्गमा जिहाद (धर्म-युद्ध) गर र जानिराख कि अल्लाह सबै सुन्दछ र जान्दछ ।

وَقَاتِلُوا فِي سَبِيلِ اللَّهِ وَاعْلَمُوا أَنَّ اللَّهَ سَمِيعٌ
عَلِيمٌ ﴿٢٤٤﴾

२४५) कोही यस्तो पनि छ ? जसले अल्लाहलाई राम्रो कर्जा (धर्म कार्यमा खर्च गर्ने रकम) देओस् जसको सट्टामा त्यो भन्दा धेरै गुणा बढी अल्लाहले प्रदान गर्ने छ ?। अल्लाहले नै जीविकालाई खुम्च्याउने र बढाउने गर्दछ र तिमी उसैतिर फर्केर जानेछौं ।

مَّن ذَا الَّذِي يُقْرِضُ اللَّهَ قَرْضًا حَسَنًا فَيُضَاعِفَهُ لَهُ
أَضْعَافًا كَثِيرَةً ۚ وَاللَّهُ يَقْبِضُ وَيَبْسُطُ وَإِلَيْهِ
تُرْجَعُونَ ﴿٢٤٥﴾

२४६) के तिमीले बनी इस्राईलको मुखियाहरूलाई देखेनौं ? जसले मूसापछि आफ्ना पैगम्बरसित भने कि तपाईंले हाम्रो लागि एउटा राजा नियुक्त गरिदिनुस् ताकि हामी अल्लाहको मार्गमा धर्म-युद्ध गरौं । पैगम्बरले भने कि यदि तिमीहरूका लागि जिहादको आदेश

أَلَمْ تَرَ إِلَى الْمَلَإِ مِن بَنِي إِسْرَائِيلَ مِن بَعْدِ
مُوسَىٰ إِذْ قَالُوا لِنَبِيٍّ لَّهُمُ ابْعَثْ لَنَا مَلِكًا نُّقَاتِلْ
فِي سَبِيلِ اللَّهِ ۖ قَالَ هَلْ عَسَيْتُمْ إِن كُتِبَ عَلَيْكُمُ
الْقِتَالُ أَلَّا تُقَاتِلُوا ۖ قَالُوا وَمَا لَنَا أَلَّا نُقَاتِلَ فِي
سَبِيلِ اللَّهِ وَقَدْ أُخْرِجْنَا مِن دِيَارِنَا وَأَبْنَائِنَا ۖ
فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ تَوَلَّوْا إِلَّا قَلِيلًا مِّنْهُمْ ۗ
وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٢٤٦﴾

अनिवार्य हुन्छ भने, बेर छैन कि युद्ध गर्न अस्वीकार गरिहाल। तिनीहरूले भन्नथाले कि हामी अल्लाहको मार्गमा किन युद्ध गर्दैनौं जब कि हामी आफ्ना वतनबाट निस्कासित र सन्तानहरूबाट अलग गरिएका छौं । फेरि जब तिनीहरूमाथि युद्धको आदेश आयो तब केही मानिसहरू बाहेक सबैले इन्कार गरिहाले। अल्लाह अत्याचारीहरूलाई राम्ररी चिन्दछ ।

وَقَالَ لَهُمْ نَبِيُّهُمْ إِنَّ اللَّهَ قَدْ بَعَثَ لَكُمْ طَالُوتَ
مَلِكًا ۚ قَالُوٓا أَنَّىٰ يَكُونُ لَهُ الْمُلْكُ عَلَيْنَا وَنَحْنُ
أَحَقُّ بِالْمُلْكِ مِنْهُ وَلَمْ يُؤْتَ سَعَةً مِّنَ الْمَالِ ۚ
قَالَ إِنَّ اللَّهَ اصْطَفَاهُ عَلَيْكُمْ وَزَادَهُ بَسْطَةً فِي
الْعِلْمِ وَالْجِسْمِ ۖ وَاللَّهُ يُؤْتِي مُلْكَهُ مَن يَشَآءُ ۚ وَاللَّهُ
وَاسِعٌ عَلِيمٌ ﴿٢٤٧﴾

२४७) र तिनीहरूको, पैगम्बरले तिनीहरूसित भने कि अल्लाहले तिम्रा लागि "तालूत" लाई (राजा) नियुक्त गरेको छ। तिनीहरूले भने कि त्यसलाई हामीमाथि शासन गर्ने अधिकार कसरी हुन सक्दछ, राजसत्ताको अधिकारी त हामी हौं र त्योसँग त धेरै धन सम्पत्ति पनि छैन। नबीले भने कि अल्लाहले त्यसलाई तिमीहरूमाथि चुनेको छ तथा उसलाई बढी ज्ञान र शारीरिक शक्ति प्रशस्त प्रदान गरेको छ । कुरो यो छ कि अल्लाहले जसलाई चाहन्छ राजगद्दी प्रदान गर्दछ। त्यो सर्वव्यापी र सर्वज्ञाता छ ।

وَقَالَ لَهُمْ نَبِيُّهُمْ إِنَّ آيَةَ مُلْكِهِ أَن يَأْتِيَكُمُ
التَّابُوتُ فِيهِ سَكِينَةٌ مِّن رَّبِّكُمْ وَبَقِيَّةٌ مِّمَّا تَرَكَ
آلُ مُوسَىٰ وَآلُ هَارُونَ تَحْمِلُهُ الْمَلَٰٓئِكَةُ ۚ إِنَّ فِي

२४८) उनीहरूको पैगम्बरले तिनीहरूसित फेरि भने कि उसको राजसत्ताको वाह्य चिन्ह यो हो कि तिम्रो

ذَٰلِكَ لَآيَةً لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٢٤٨﴾

छेउमा त्यो बाकस आउने छ, जसलाई (स्वर्गदूत) फरिश्ताहरूले उचालेका हुनेछन् । त्यसमा तिम्रो पालनहारबाट तिमीलाई सन्तुष्टि प्रदान गर्ने कुरो हुनेछ, र केही अन्य कुराहरू पनि हुन्छन् जुन कि मूसा र हारूनले छाडेर गएका थिए । यदि तिमी आस्थावान छौ भने यो तिम्रो लागि एउटा प्रत्यक्ष प्रमाण हो ।

فَلَمَّا فَصَلَ طَالُوتُ بِالْجُنُودِ قَالَ إِنَّ اللَّهَ مُبْتَلِيكُم بِنَهَرٍ فَمَن شَرِبَ مِنْهُ فَلَيْسَ مِنِّي وَمَن لَّمْ يَطْعَمْهُ فَإِنَّهُ مِنِّي إِلَّا مَنِ اغْتَرَفَ غُرْفَةً بِيَدِهِ ۚ فَشَرِبُوا مِنْهُ إِلَّا قَلِيلًا مِّنْهُمْ ۚ فَلَمَّا جَاوَزَهُ هُوَ وَالَّذِينَ آمَنُوا مَعَهُ قَالُوا لَا طَاقَةَ لَنَا الْيَوْمَ بِجَالُوتَ وَجُنُودِهِ ۚ قَالَ الَّذِينَ يَظُنُّونَ أَنَّهُم مُّلَاقُو اللَّهِ كَم مِّن فِئَةٍ قَلِيلَةٍ غَلَبَتْ فِئَةً كَثِيرَةً بِإِذْنِ اللَّهِ ۗ وَاللَّهُ مَعَ الصَّابِرِينَ ﴿٢٤٩﴾

२४९) (तसर्थ) जब ''तालूत'' आफ्ना सेनाहरूलाई लिएर प्रस्थान गर्नुभयो, तब उनले भने, सुन अल्लाहले एउटा नहरबाट तिम्रो परीक्षा गर्नेछ, जुन मानिस त्यसबाट पानी पिउँछ त्यो मेरो होइन र जसले पिउँदैन त्यो मेरो हो । हो, यदि कसैले एक अञ्जुली मात्र पिउँछ (भने त्यो क्षम्य छ) तर केही मानिसहरू बाहेक सबैले पानी पिई हाले । जब ''तालूत'' र उनको साथमा अन्य सबै नहर पारी पुगे, त तिनीहरूले भन्नथाले कि आज हामीमा जालूत र उसको सेनासंग लड्न शक्ति छैन । तर अल्लाहको अगाडि उपस्थित हुनुमा आस्था राख्नेहरूले भन्नथाले कि कहिले काहीं सानो छोटो टुक्डीले पनि अल्लाहको आदेशबाट ठूलो समूहमाथि विजय प्राप्त गर्दछन् । र अल्लाह सहनशीलहरूसँग छ ।

२५०) जब तिनीहरूको "जालूत" र उसको सेनासंग मुक़ाबिला भयो अनि उनिहरूले प्रार्थना गरे कि हे पालनहार ! हामीलाई सहनशीलता र दृढता प्रदान गर र हामीलाई युद्धमा अनास्थावानहरू माथि विजय प्रदान गर ।

وَلَمَّا بَرَزُوا لِجَالُوتَ وَجُنُودِهِ قَالُوا رَبَّنَا أَفْرِغْ عَلَيْنَا صَبْرًا وَثَبِّتْ أَقْدَامَنَا وَانصُرْنَا عَلَى الْقَوْمِ الْكَافِرِينَ ﴿٢٥٠﴾

२५१) अनि उनीहरूले अल्लाहको आदेशबाट जालूतको सेनालाई पराजित गरे । र हजरत दाऊदले जालुतलाई मार्नु भयो र अल्लाहले दाऊदलाई राजसत्ता र ज्ञान प्रदान गऱ्यो र जेजति चाह्यो, सिकायो । यदि अल्लाहले मानिसहरूलाई एक अर्काको आक्रमण र अतिक्रमणबाट सुरक्षा प्रदान नगरेको भए पृथ्वीमा उपद्रव हुने थियो । तर अल्लाह संसारका (सम्पूर्ण) मानिसहरूमाथि अत्यन्त दयावान छ ।

فَهَزَمُوهُم بِإِذْنِ اللَّهِ وَقَتَلَ دَاوُودُ جَالُوتَ وَآتَاهُ اللَّهُ الْمُلْكَ وَالْحِكْمَةَ وَعَلَّمَهُ مِمَّا يَشَاءُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ بَعْضَهُم بِبَعْضٍ لَّفَسَدَتِ الْأَرْضُ وَلَٰكِنَّ اللَّهَ ذُو فَضْلٍ عَلَى الْعَالَمِينَ ﴿٢٥١﴾

२५२) यी अल्लाहका आयतहरू हुन् जसलाई हामीले तिमीलाई सत्यतापूर्वक पढी सुनाउँदछौं । (र हे मोहम्मद स. अ.!) तिमी निःसन्देह पैगम्बरहरूमध्ये कै एक हौ ।

تِلْكَ آيَاتُ اللَّهِ نَتْلُوهَا عَلَيْكَ بِالْحَقِّ ۚ وَإِنَّكَ لَمِنَ الْمُرْسَلِينَ ﴿٢٥٢﴾

२५३) यी पैगम्बरहरू हुन् । तिनीहरूमध्ये हामीले केहीमाथि केहीलाई प्रधानता प्रदान गरेका छौं । केही यस्ता छन् जोसित अल्लाहले कुरा गऱ्यो र केहीका दर्जा उच्च बनायो

تِلْكَ الرُّسُلُ فَضَّلْنَا بَعْضَهُمْ عَلَىٰ بَعْضٍ ۘ مِّنْهُم مَّن كَلَّمَ اللَّهُ ۖ وَرَفَعَ بَعْضَهُمْ دَرَجَاتٍ ۚ وَآتَيْنَا عِيسَى ابْنَ مَرْيَمَ الْبَيِّنَاتِ وَأَيَّدْنَاهُ بِرُوحِ الْقُدُسِ ۗ وَلَوْ شَاءَ اللَّهُ مَا اقْتَتَلَ الَّذِينَ مِن بَعْدِهِم مِّن بَعْدِ مَا جَاءَتْهُمُ الْبَيِّنَاتُ وَلَٰكِنِ اخْتَلَفُوا فَمِنْهُم مَّنْ

آمَنَ وَمِنْهُم مَّن كَفَرَ ۚ وَلَوْ شَاءَ اللَّهُ مَا اقْتَتَلُوا وَلَٰكِنَّ اللَّهَ يَفْعَلُ مَا يُرِيدُ ﴿٢٥٣﴾

र मरियमको पुत्र ईसालाई चमत्कारहरू प्रदान गर्‍यौं र रूहुल्कुद्सद्वारा (पवित्र आत्मा) उनलाई मद्दत पुर्‍यायो । यदि अल्लाहले चाहेको भए, तिनीभन्दा पहिलेका मानिसहरू आफ्ना छेउ निशानीहरू आइसकेपछि आपसमा कदापि युद्ध गर्दैनथे, तर तिनीहरूले मतभेदका कुरा गरे, तिनीहरूमध्ये केही त आस्तिक भइहाले र केही काफिर नै रहे । र यदि अल्लाहले चाहेको भए यी मानिसहरू आपसमा लड्ने थिएनन्, तर अल्लाहले जे चाहन्छ, गर्दछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَنفِقُوا مِمَّا رَزَقْنَاكُم مِّن قَبْلِ أَن يَأْتِيَ يَوْمٌ لَّا بَيْعٌ فِيهِ وَلَا خُلَّةٌ وَلَا شَفَاعَةٌ ۗ وَالْكَافِرُونَ هُمُ الظَّالِمُونَ ﴿٢٥٤﴾

२५४) हे ईमान भएकाहरू! जुन हामीले तिमीलाई प्रदान गरेका छौं, त्यसबाट त्यो दिन आउँदा सम्म खर्च गर्ने गर जब न व्यापार हुनेछ, न मित्रता र न त कुनै सिफारिश काम लाग्नेछ । र कुफ्र गर्नेहरू नै अत्याचारी हुन् ।

اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ الْحَيُّ الْقَيُّومُ ۚ لَا تَأْخُذُهُ سِنَةٌ وَلَا نَوْمٌ ۚ لَّهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ مَن ذَا الَّذِي يَشْفَعُ عِندَهُ إِلَّا بِإِذْنِهِ ۚ يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ ۖ وَلَا يُحِيطُونَ بِشَيْءٍ مِّنْ عِلْمِهِ إِلَّا بِمَا شَاءَ ۚ وَسِعَ كُرْسِيُّهُ السَّمَاوَاتِ وَالْأَرْضَ ۖ وَلَا يَئُودُهُ حِفْظُهُمَا ۚ وَهُوَ الْعَلِيُّ الْعَظِيمُ ﴿٢٥٥﴾

२५५) अल्लाह नै वास्तवमा सत्य पूजनीय छ, उसबाहेक अरु कोही पूज्य छैन । (ऊ) सधैं जीवित रहने वाला र सबैलाई थाम्न सक्ने वाला छ । उसलाई न अल्छी लाग्छ न निद्रा आउँछ, जे जति आकाशमण्डलमा छन् र जे धरतीमा छ, सबै उसैको हो । को छ जसले उसको अनुमति बिना उसँग कसैको सिफारिश गर्न

सकोस् । जे जति उनको अगाडि छ र जे जति तिनीहरू भन्दा अघि भइसकेको छ । उसलाई सबै थाहा छ, र तिनीहरूले उसको ज्ञानको केही अंशको पनि घेराबन्दी गर्न सक्दैनन्, हो उसले चाहेको हदसम्म मात्र । उसको कुर्सीले आकाश- मण्डल र धरतीलाई घेरी राखेको छ र अल्लाहले उनको रक्षा गर्नबाट थाक्दैन र नत दिक्क मान्छ । ऊ त सर्वोच्च र सबभन्दा ठूलो हो ।

२५६) धर्ममा कुनै बलजफ्ती छैन । वास्तवमा कुमार्गबाट सुमार्ग प्रष्ट भइसकेको छ । यसर्थ जसले अल्लाह बाहेक अन्य मूर्तिहरूमा आस्था राख्दैन र अल्लाहमाथि आस्था राख्यो, उसले यस्तो बलियो डोरी समातिसकेको छ, जुन कि कहिल्यै चुँड्ने छैन। अल्लाह सबै कुरा सुन्ने वाला-सवर्ज्ञ हो।

لَآ اِكْرَاهَ فِي الدِّيْنِ ۙ قَدْ تَّبَيَّنَ الرُّشْدُ مِنَ الْغَيِّ ۚ فَمَنْ يَّكْفُرْ بِالطَّاغُوْتِ وَيُؤْمِنْۢ بِاللّٰهِ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقٰى ۤ لَا انْفِصَامَ لَهَا ۭ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٢٥٦﴾

२५७) जुन मानिसहरू आस्थावान छन् अल्लाह तिनको मित्र हो, तिनलाई अँध्यारोबाट निकाली उज्यालोतिर लग्दछ र जो काफिर छन्, तिनका साथी शैतानहरू हुन्, जसले कि तिनलाई उज्यालोबाट निकाली अँध्यारोतिर लग्छन् यिनै मानिसहरू नारकीय हुन् जुन त्यसमा सधैं रहने छन् ।

اَللّٰهُ وَلِيُّ الَّذِيْنَ اٰمَنُوْا ۙ يُخْرِجُهُمْ مِّنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ڛ وَالَّذِيْنَ كَفَرُوْٓا اَوْلِيٰۗـــُٔــهُمُ الطَّاغُوْتُ ۙ يُخْرِجُوْنَهُمْ مِّنَ النُّوْرِ اِلَى الظُّلُمٰتِ ۭ اُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢٥٧﴾

२५८) के तिमीले त्यस मान्छेलाई देखेनौं, जसले राज्यसत्ता पाएर, इब्राहीम (अलै.) सित पालनकर्ताको बारेमा विवाद गर्न थाल्यो ? जब इब्राहीमले भने, मेरो पालनहार त त्यो हो जसले जीवित राख्द्छ र मार्दछ। उसले भन्यो कि जीवित राख्ने र मार्ने काम त म पनि गर्दछु। इब्राहीमले भने कि अल्लाहले त सूर्यलाई पूर्वबाट उदाउन लगाउँछ, तिमीले उसलाई पश्चिमबाट उदाउन लगाइदेऊ। (यो सुनेर) त्यो काफिर आश्चर्य चकित भयो र अल्लाह अत्याचारीहरूलाई मार्गदर्शन गर्दैन।

أَلَمْ تَرَ إِلَى الَّذِي حَاجَّ إِبْرَاهِيمَ فِي رَبِّهِ أَنْ آتَاهُ اللَّهُ الْمُلْكَ إِذْ قَالَ إِبْرَاهِيمُ رَبِّيَ الَّذِي يُحْيِي وَيُمِيتُ قَالَ أَنَا أُحْيِي وَأُمِيتُ قَالَ إِبْرَاهِيمُ فَإِنَّ اللَّهَ يَأْتِي بِالشَّمْسِ مِنَ الْمَشْرِقِ فَأْتِ بِهَا مِنَ الْمَغْرِبِ فَبُهِتَ الَّذِي كَفَرَ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٢٥٨﴾

२५९) वा यस्तै किसिमले (त्यो मान्छेलाई देखेनौं) जो त्यस गाउँबाट हिड्यो जुन कि छत समेत ध्वस्त भएको थियो, अनि त्यसले भन्यो कि अल्लाह यसलाई मारिसकेपछि कसरी जीवित पार्नेछ ?। अनि अल्लाहले सय वर्षसम्मका लागि त्यसलाई मृतक राख्यो, फेरि त्यसलाई पूनर्जिवित गऱ्यो र सोध्यो तिमी कति अवधिसम्म मृतक थियौ ?। त्यसले जवाफ दियो कि एकदिन अथवा त्योभन्दा पनि कम। अल्लाहले भन्यो, होइन, बरु सयवर्ष तिमी मृत थियौ र आफ्नो खानपिनको कुराहरू हेर कि यति

أَوْ كَالَّذِي مَرَّ عَلَىٰ قَرْيَةٍ وَهِيَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا قَالَ أَنَّىٰ يُحْيِي هَٰذِهِ اللَّهُ بَعْدَ مَوْتِهَا فَأَمَاتَهُ اللَّهُ مِائَةَ عَامٍ ثُمَّ بَعَثَهُ قَالَ كَمْ لَبِثْتَ قَالَ لَبِثْتُ يَوْمًا أَوْ بَعْضَ يَوْمٍ قَالَ بَلْ لَبِثْتَ مِائَةَ عَامٍ فَانْظُرْ إِلَىٰ طَعَامِكَ وَشَرَابِكَ لَمْ يَتَسَنَّهْ وَانْظُرْ إِلَىٰ حِمَارِكَ وَلِنَجْعَلَكَ آيَةً لِلنَّاسِ وَانْظُرْ إِلَى الْعِظَامِ كَيْفَ نُنْشِزُهَا ثُمَّ نَكْسُوهَا لَحْمًا فَلَمَّا تَبَيَّنَ لَهُ قَالَ أَعْلَمُ أَنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٥٩﴾

लामो समयसम्म पनि अलिकति बिग्रेको छैन् र आफ्नो गदहालाई हेर (जुनकि मृतक अवस्थामा छ) । हामीले तिमीलाई मानिसहरूको निम्ति निशानी बनाउँछौं र (गदहाको) हाँडहरू हेर कि हामीले तिनलाई कसरी जोडी तिनीमाथि मासुको आवरण हालि दिन्छौं । जब यी सबै त्यसले देख्यो त भनिहाल्यो कि म विश्वास गर्दछु कि अल्लाह हरेक कुरामाथि शक्ति सम्पन्न छ ।

وَإِذْ قَالَ إِبْرٰهِمُ رَبِّ أَرِنِي كَيْفَ تُحْيِ الْمَوْتٰى ۖ قَالَ أَوَلَمْ تُؤْمِنْ ۖ قَالَ بَلٰى وَلٰكِنْ لِّيَطْمَئِنَّ قَلْبِي ۖ قَالَ فَخُذْ أَرْبَعَةً مِّنَ الطَّيْرِ فَصُرْهُنَّ إِلَيْكَ ثُمَّ اجْعَلْ عَلٰى كُلِّ جَبَلٍ مِّنْهُنَّ جُزْءًا ثُمَّ ادْعُهُنَّ يَأْتِينَكَ سَعْيًا ۚ وَاعْلَمْ أَنَّ اللّٰهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٦٠﴾

२६०) र, जब इब्राहीमले अल्लाहसित भने कि हे मेरो पालनहार ! मलाई देखाउ कि तिमीले मृतकहरूलाई कसरी जीवित पार्नेछौ ? अल्लाहले भने कि के तिमीले (यो कुरालाई) विश्वास गरेनौं ?। तिनले भने हो, अवश्य विश्वास गर्छु तर यस कारणले (चाहन्छु) ताकि पूर्णरूपले मलाई सन्तोष होस् । अल्लाहले भन्यो कि चारवटा चराहरू समातेर ल्याऊ र तिनलाई टुक्रा-टुक्रा गरिहाल, फेरि तिनका एक-एक टुक्रा प्रत्येक पहाडमा राखिहाल । अनि तिनलाई बोलाऊ तिनीहरू तिमीतिर दगुर्दै आउने छन् र जानीराख कि अल्लाह सर्वसामर्थ्य र सर्वबुद्धि सम्पन्न छ ।

مَثَلُ الَّذِينَ يُنْفِقُونَ أَمْوَالَهُمْ فِي سَبِيلِ اللّٰهِ كَمَثَلِ حَبَّةٍ أَنْبَتَتْ سَبْعَ سَنَابِلَ فِي كُلِّ سُنْبُلَةٍ

२६१) जुन मानिसहरूले अल्लाहको मार्गमा आफ्ना सम्पत्ति खर्च गर्दछन्,

مِّائَةُ حَبَّةٍ ؕ وَاللّٰهُ يُضٰعِفُ لِمَنۡ يَّشَآءُ ؕ وَاللّٰهُ وَاسِعٌ عَلِيۡمٌ ﴿۲۶۱﴾

त्यसको उदाहरण त्यस दानाको जस्तो छ जसबाट सातवटा बालाहरू निस्कन्छन् र प्रत्येक बालामा सय-सयवटा दानाहरू हुनेछन् । र अल्लाहले जसको (सम्पतिमा) चाहन्छ, वृद्धि गर्दछ । र अल्लाह अत्यन्त सर्वव्यापी र प्रत्येक कुरोको ज्ञाता छ ।

اَلَّذِيۡنَ يُنۡفِقُوۡنَ اَمۡوَالَهُمۡ فِىۡ سَبِيۡلِ اللّٰهِ ثُمَّ لَا يُتۡبِعُوۡنَ مَاۤ اَنۡفَقُوۡا مَنًّا وَّلَاۤ اَذًى ۙ لَّهُمۡ اَجۡرُهُمۡ عِنۡدَ رَبِّهِمۡ ۚ وَلَا خَوۡفٌ عَلَيۡهِمۡ وَلَا هُمۡ يَحۡزَنُوۡنَ ﴿۲۶۲﴾

२६२) जुन मानिसहरूले अल्लाहको बाटोमा आफ्ना धन सम्पत्ति खर्च गदर्छन् र त्यस पछि उपकार गरेको देखाउँदैनन्, न त (कसैलाई) दुःख दिन्छन्, तिनको बदला तिनको पालनहारसित छ, र न त तिनलाई भय-त्रास हुनेछ, न त तिनी दुःखी नै हुनेछन् ।

قَوۡلٌ مَّعۡرُوۡفٌ وَّمَغۡفِرَةٌ خَيۡرٌ مِّنۡ صَدَقَةٍ يَّتۡبَعُهَاۤ اَذًى ؕ وَاللّٰهُ غَنِىٌّ حَلِيۡمٌ ﴿۲۶۳﴾

२६३) मीठो कुरा गर्नु र क्षमा गर्नु त्यस दान भन्दा उत्तम हो जसपछि दुःख दिइन्छ । र अल्लाह निस्पृह र नितान्त सहनशील छ ।

يٰۤاَيُّهَا الَّذِيۡنَ اٰمَنُوۡا لَا تُبۡطِلُوۡا صَدَقٰتِكُمۡ بِالۡمَنِّ وَالۡاَذٰى ۙ كَالَّذِىۡ يُنۡفِقُ مَالَهٗ رِئَآءَ النَّاسِ وَلَا يُؤۡمِنُ بِاللّٰهِ وَالۡيَوۡمِ الۡاٰخِرِ ؕ فَمَثَلُهٗ كَمَثَلِ صَفۡوَانٍ عَلَيۡهِ تُرَابٌ فَاَصَابَهٗ وَابِلٌ فَتَرَكَهٗ صَلۡدًا ؕ لَا يَقۡدِرُوۡنَ عَلٰى شَىۡءٍ مِّمَّا كَسَبُوۡا ؕ وَاللّٰهُ لَا يَهۡدِى الۡقَوۡمَ الۡكٰفِرِيۡنَ ﴿۲۶۴﴾

२६४) हे आस्थावानहरू! आफूले गरेको दानलाई अर्कामाथि उपकार दर्शाएर र अरुलाई कष्ट दिएर बर्बाद न गर । जसरी एउटा मानिसले अरु मानिसहरूलाई देखाउनको निम्ति आफ्नो सम्पत्ति खर्च गदर्छ र उसले अल्लाह र आखिरतको दिनमा विश्वास गर्दैन । उसको उदाहरण त्यस सफा ढुँगा जस्तो

छ, जसमाथि माटोको पातलो तह जमेको हुन्छ र त्यसमाथि ठूलो वृष्टि भई त्यसलाई एकदम सफा गरिदिन्छ । यी मानिसहरूलाई आफ्ना कर्महरूको प्रतिफल प्राप्त हुनेछैन र अल्लाहले यस्ता कृतघ्नहरूलाई मार्गनिर्देशन गर्दैन ।

وَمَثَلُ الَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمُ ابْتِغَآءَ مَرْضَاتِ اللّٰهِ وَتَثْبِيْتًا مِّنْ اَنْفُسِهِمْ كَمَثَلِ جَنَّةٍۭ بِرَبْوَةٍ اَصَابَهَا وَابِلٌ فَاٰتَتْ اُكُلَهَا ضِعْفَيْنِ ۚ فَاِنْ لَّمْ يُصِبْهَا وَابِلٌ فَطَلٌّ ۗ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ﴿٢٦٥﴾

२६५) जुन मानिसहरू अल्लाहको प्रसन्नता प्राप्त गर्न पवित्र हृदयले आफ्नो सम्पत्ति खर्च गर्दछन्, तिनको दृष्टान्त त्यस बगैंचाको जस्तो छ जुन अग्लो ठाउँमा अवस्थित छ । त्यसमाथि वर्षा हुन्छ, त्यसबाट त्यसले दुईगुणा फल दिन्छ र ठूलो वृष्टि न भएपनि हल्का तुषार नै प्रयाप्त हुन्छ र अल्लाहले तिम्रा क्रियाकलापहरूलाई देखिराखेको छ ।

اَيَوَدُّ اَحَدُكُمْ اَنْ تَكُوْنَ لَهٗ جَنَّةٌ مِّنْ نَّخِيْلٍ وَّاَعْنَابٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۙ لَهٗ فِيْهَا مِنْ كُلِّ الثَّمَرٰتِ ۙ وَاَصَابَهُ الْكِبَرُ وَلَهٗ ذُرِّيَّةٌ ضُعَفَآءُ ۚ فَاَصَابَهَآ اِعْصَارٌ فِيْهِ نَارٌ فَاحْتَرَقَتْ ۗ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَتَفَكَّرُوْنَ ﴿٢٦٦﴾

२६६) के तिमीहरूमध्ये कसैले यो इच्छा गर्दछ कि ऊसंग अँगूर र खजूरको बगैंचा होस् जसमा नहरहरू बगिराखुन् र त्यसमा हरेक किसिमका फलहरूलागि रहुन् र त्यो मानिसको वृद्धावस्था आईपुग्दछ र उसका स-साना बालबालिकाहरू पनि हुन्, अनि एक्कासी त्यो बगैंचा आगोको एउटा भूमरीमा परी भस्म भइहालोस् । यस किसिमबाट अल्लाहले तिमीसित आफ्ना आयतहरू स्पष्टरूपले वर्णन गर्छ ताकि तिमी चिन्तन मनन् गर ।

२६७) मोमिनहरू हो ! जुन पवित्र, राम्रो कुरा तिमीले कमाउँछौ र जुन कुरा हामीले तिम्रा निम्ति पृथ्वीबाट उब्जाउँछौं, त्यसबाट (धर्म मार्गमा) खर्च गर र त्यसमध्ये नराम्रा वस्तु दिने विचार नराख्नु, जुन वस्तु तिमी स्वयम् लिन चाहँदैनौ । र, बुझिराख कि अल्लाहलाई कुनै कुराको आवश्यकता छैन र ऊ सर्व गुण सम्पन्न छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اَنْفِقُوْا مِنْ طَيِّبٰتِ مَا كَسَبْتُمْ وَمِمَّآ اَخْرَجْنَا لَكُمْ مِّنَ الْاَرْضِ ۪ وَلَا تَيَمَّمُوا الْخَبِيْثَ مِنْهُ تُنْفِقُوْنَ وَلَسْتُمْ بِاٰخِذِيْهِ اِلَّآ اَنْ تُغْمِضُوْا فِيْهِ ۭ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ غَنِيٌّ حَمِيْدٌ ﴿٢٦٧﴾

२६८) (हेर) शैतानले तिमीलाई गरिबीबाट तर्साउँछ र निर्लज्जातापूर्ण काम गर्ने प्रेरणा दिन्छ । र अल्लाह तिमीसित आफ्नो उपकार र वरदानको वचन दिन्छ । र अल्लाह सर्वव्यापी र अति ज्ञानी छ ।

اَلشَّيْطٰنُ يَعِدُكُمُ الْفَقْرَ وَيَاْمُرُكُمْ بِالْفَحْشَاۗءِ ۚ وَاللّٰهُ يَعِدُكُمْ مَّغْفِرَةً مِّنْهُ وَفَضْلًا ۭ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ ﴿٢٦٨﴾

२६९) उसले जसलाई मनपराउँछ, बुद्धि र कौशल प्रदान गर्दछ र जसले बुद्धि र कौशल प्राप्त गर्‍यो, निःसन्देह उसले ठूलो वरदान प्राप्त गर्‍यो । र उपदेश तिनैले स्वीकार गर्दछन् जो बुद्धिमान छन् ।

يُّؤْتِي الْحِكْمَةَ مَنْ يَّشَاۗءُ ۚ وَمَنْ يُّؤْتَ الْحِكْمَةَ فَقَدْ اُوْتِيَ خَيْرًا كَثِيْرًا ۭ وَمَا يَذَّكَّرُ اِلَّآ اُولُوا الْاَلْبَابِ ﴿٢٦٩﴾

२७०) तिमी (अल्लाहको मार्गमा) जे जति खर्च गर्दछौ र जे सुकै मन्नत गर्दछौ, अल्लाहलाई थाहा हुन्छ र दुष्कर्म गर्नेहरूको कोही सहायता गर्ने छैन ।

وَمَآ اَنْفَقْتُمْ مِّنْ نَّفَقَةٍ اَوْ نَذَرْتُمْ مِّنْ نَّذْرٍ فَاِنَّ اللّٰهَ يَعْلَمُهٗ ۭ وَمَا لِلظّٰلِمِيْنَ مِنْ اَنْصَارٍ ﴿٢٧٠﴾

२७१) यदि तिमी दान र सहायता खुला रूपमा दिन्छौ भने पनि राम्रो छ र

اِنْ تُبْدُوا الصَّدَقٰتِ فَنِعِمَّا هِىَ ۚ وَاِنْ تُخْفُوْهَا وَتُؤْتُوْهَا الْفُقَرَاۗءَ فَهُوَ خَيْرٌ

لَّكُمْ ۖ وَيُكَفِّرُ عَنكُم مِّن سَيِّئَاتِكُمْ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٢٧١﴾

यदि गोप्य रूपले गरीब असहायलाई दिन्छौ त त्यो तिम्रोलागी झन् राम्रो छ । र तिम्रा पापहरूलाई समाप्त गरिदिन्छ । र अल्लाहलाई तिम्रा सबै क्रियाकलापहरूबारे थाहा छ ।

لَّيْسَ عَلَيْكَ هُدَاهُمْ وَلَٰكِنَّ اللَّهَ يَهْدِي مَن يَشَاءُ ۗ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ فَلِأَنفُسِكُمْ ۚ وَمَا تُنفِقُونَ إِلَّا ابْتِغَاءَ وَجْهِ اللَّهِ ۚ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ يُوَفَّ إِلَيْكُمْ وَأَنتُمْ لَا تُظْلَمُونَ ﴿٢٧٢﴾

२७२) तिमी तिनीहरूको मार्ग-निर्देशनको लागि जिम्मेवार छैनौ, बरु अल्लाहले नै जसलाई चाहन्छ, मार्ग निर्देशन गर्दछ । र तिमीले जुन असल माल खर्च गर्नेछौ, त्यसको फाइदा तिमीलाई नै हुनेछ । र तिमीले अल्लाहको सदिच्छा हासिल गर्न मात्र खर्च गर्नुपर्दछ । तिमीले जेजति खर्च गर्छौ, त्यसको पूरा प्रतिफल तिमीलाई दिइनेछ र तिम्रो कुनै प्रकारको हक मारिने छैन ।

لِلْفُقَرَاءِ الَّذِينَ أُحْصِرُوا فِي سَبِيلِ اللَّهِ لَا يَسْتَطِيعُونَ ضَرْبًا فِي الْأَرْضِ يَحْسَبُهُمُ الْجَاهِلُ أَغْنِيَاءَ مِنَ التَّعَفُّفِ تَعْرِفُهُم بِسِيمَاهُمْ لَا يَسْأَلُونَ النَّاسَ إِلْحَافًا ۗ وَمَا تُنفِقُوا مِنْ خَيْرٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٢٧٣﴾

२७३) (दान पुण्यका हकदार) त्यस्ता गरीब, असहाय छन् जो अल्लाहको मार्गमा रोकिएर बसेका छन् र देशको अन्य भागमा जान सक्दैनन्, र माँग्न लाज मान्दछन्, यहाँसम्म कि न माँग्नाले अनभिज्ञ मानिसले तिनलाई सम्पन्न ठान्दछ, र तिमीले तिनको अनुहारको आकारबाट उनलाई चिन सक्ने छौ । तिनीहरूले मानिसहरूसँग प्रार्थना गरी माँग्न सक्दैनन् र तिमीले जे जति धन सम्पत्ति खर्च गर्दछौ, निःसन्देह अल्लाहलाई त्यसको ज्ञान हुन्छ ।

اَلَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ بِالَّيْلِ وَالنَّهَارِ سِرًّا وَّعَلَانِيَةً فَلَهُمْ اَجْرُهُمْ عِنْدَ رَبِّهِمْ ۚ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٢٧٤﴾

२७४) जुन मानिसहरूले दिन वा रात, लुकाई वा प्रकट रूपमा आफ्ना सम्पत्ति खर्च गर्दछन्, तिनको पारितोषिक अल्लाहसँग छ र तिनलाई न कुनै भय-त्रास हुनेछ न कुनै चिन्ता ।

اَلَّذِيْنَ يَاْكُلُوْنَ الرِّبٰوا لَا يَقُوْمُوْنَ اِلَّا كَمَا يَقُوْمُ الَّذِيْ يَتَخَبَّطُهُ الشَّيْطٰنُ مِنَ الْمَسِّ ۭ ذٰلِكَ بِاَنَّهُمْ قَالُوْٓا اِنَّمَا الْبَيْعُ مِثْلُ الرِّبٰوا ۘ وَاَحَلَّ اللّٰهُ الْبَيْعَ وَحَرَّمَ الرِّبٰوا ۭ فَمَنْ جَاۗءَهٗ مَوْعِظَةٌ مِّنْ رَّبِّهٖ فَانْتَهٰى فَلَهٗ مَا سَلَفَ ۭ وَاَمْرُهٗٓ اِلَى اللّٰهِ ۭ وَمَنْ عَادَ فَاُولٰۗىِٕكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢٧٥﴾

२७५) जुन मानिसहरू व्याज खान्छन् तिनी (चिहानहरूबाट) यस प्रकारले (भ्रमित भई) उठ्ने छन् जस्तो कि शैतानले छोएको पागल होस् । यो यस कारणले कि तिनीहरूले भन्ने गर्दथे कि व्यापार गर्नु पनि त यस्तै छ, जस्तो कि ब्याज (लिनु) । तर व्यापारलाई अल्लाहले हलाल बनाएको छ र ब्याजलाई हराम । जुन मानिसले आफ्नो छेउ अल्लाहको निर्देशन पुगे पछि (ब्याज लिन) त्याग दियो भने जेजति भइसकेको छ, त्यसको माफी पाउने छ । र त्यसको निर्णय अल्लाहले गर्ने छ । र यदि फेरि (व्याज) लिन थाल्यो भने, त्यस्ता मानिसहरू नारकीय हुनेछन्, र सधैं नर्कमा रहने छन् ।

يَمْحَقُ اللّٰهُ الرِّبٰوا وَيُرْبِي الصَّدَقٰتِ ۭ وَاللّٰهُ لَا يُحِبُّ كُلَّ كَفَّارٍ اَثِيْمٍ ﴿٢٧٦﴾

२७६) अल्लाहले ब्याजलाई खतम गर्दछ र दानमा बृद्धि गर्दछ र अल्लाहले कुनै कृतघ्न र पापीलाई प्रेम गर्दैन ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَاَقَامُوا الصَّلٰوةَ وَاٰتَوُا الزَّكٰوةَ لَهُمْ اَجْرُهُمْ عِنْدَ

२७७) नि:सन्देह जुन मानिसहरूले ईमानका साथ "सुन्नत"को मोताबिक असल

رَبِّهِمْ ۚ وَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٢٧٧﴾

काम गर्दछन्, नमाज पढछन् र जकात दिंदै गर्छन्, तिनीले तिनका कर्महरूको फल अल्लाह कहाँ पाउने छन् र (कियामतको दिन) तिनलाई न कुनै भय हुनेछ न तिनीहरू दु:खी हुनेछन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ وَذَرُوا مَا بَقِيَ
مِنَ الرِّبَا إِنْ كُنْتُمْ مُؤْمِنِينَ ﴿٢٧٨﴾

२७८) हे मोमिनहरू! अल्लाहसित डर र जति ब्याज बाँकी रहेको छ, त्यसलाई छाडिदेऊ यदि तिमी ईमानवाला छौ ।

فَإِنْ لَمْ تَفْعَلُوا فَأْذَنُوا بِحَرْبٍ مِنَ اللَّهِ
وَرَسُولِهِ ۖ وَإِنْ تُبْتُمْ فَلَكُمْ رُءُوسُ أَمْوَالِكُمْ
لَا تَظْلِمُونَ وَلَا تُظْلَمُونَ ﴿٢٧٩﴾

२७९) र यदि यस्तो गर्दैनौ भने त अल्लाह र उसको रसूलसँग युद्धको लागि तयार भइहाल, हो यदि पश्चाताप गर्छौ भने तिमी आफ्नो वास्तविक रकमको हकदार छौ, न तिमी अत्याचार गर नत तिमीमाथि अत्याचार गरियोस् ।

وَإِنْ كَانَ ذُو عُسْرَةٍ فَنَظِرَةٌ إِلَىٰ مَيْسَرَةٍ ۚ وَأَنْ
تَصَدَّقُوا خَيْرٌ لَكُمْ ۖ إِنْ كُنْتُمْ تَعْلَمُونَ ﴿٢٨٠﴾

२८०) यदि कठिनाईमा छ भने उसलाई तिर्न सजिलो नहुञ्जेलसम्मको लागि समय देऊ । तर यदि तिमीले त्यसलाई दानको रूपमा प्रदान गरिदिन्छौ भने तिम्रो निम्ति सबभन्दा राम्रो हुन्छ, यदि यो कुरा तिमी बुझ्दछौ भने ।

وَاتَّقُوا يَوْمًا تُرْجَعُونَ فِيهِ إِلَى اللَّهِ ۖ ثُمَّ تُوَفَّىٰ
كُلُّ نَفْسٍ مَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٨١﴾

२८१) र त्यस दिनसँग डर जबकि अल्लाहको अगाडि फर्केर जानेछौ र प्रत्येक मानिसले आफ्नो कर्महरूको प्रतिफल प्राप्त गर्ने छ र तिनीहरूमाथि अन्याय हुने छैन ।

२८२) हे मोमिनहरू! जब तिमीले आपसमा कुनै निश्चित अवधिको लागि ऋणको लेनदेन व्यवहार गर्दछौ भने त्यसलाई लेखाई राख र लेख्नेले तिमीहरूमध्ये (कसैको अहित हुने गरी न लेखोस् बरु) न्यायपूर्ण तरिकाले लेखोस् साथै त्यसले, लेख्न अस्वीकार पनि न गरोस र दस्तावेज लेखिहालोस् । किनभने उसलाई अल्लाहले लेख्न सिकाएको छ र जुन मानिसले ऋण लिन्छ त्यसैले (दस्तावेजको) लिखतको व्यहोरा भनेर लेखाओस् र अल्लाहसँग जो कि उसको स्वामी हो, डरोस्, र ऋणको रकमबाट केही घटाएर नलेखाओस् र यदि ऋण लिने मान्छे मन्द बुद्धि वा निर्वल, वृद्ध, होस् अथवा व्यहोरा लेखाउने योग्यता छैन भएको अवस्थामा जुन त्यसको उत्तराधिकारी होस्, त्यसले न्यायपूर्ण ढङ्गले मज्मून भनी उसको तर्फबाट लेखाई देओस्, र दुई पुरुषलाई साक्षी राख । यदि दुई पुरुष छैनन् भने एउटा पुरुष र दुईटा स्त्री जसलाई तिमीले साक्षीको रूपमा रुचाउँछौ, जसबाट ती स्त्री मध्ये एउटीले बिर्सेमा अर्कीले त्यसलाई सम्झाई हालोस् र जब साक्षीहरूलाई (साक्ष्यको निम्ति)

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِذَا تَدَايَنْتُمْ بِدَيْنٍ اِلٰۤى اَجَلٍ
مُّسَمًّى فَاكْتُبُوْهُ ؕ وَلْيَكْتُبْ بَّيْنَكُمْ كَاتِبٌۢ بِالْعَدْلِ
وَلَا يَاْبَ كَاتِبٌ اَنْ يَّكْتُبَ كَمَا عَلَّمَهُ اللّٰهُ فَلْيَكْتُبْ ۚ
وَلْيُمْلِلِ الَّذِىْ عَلَيْهِ الْحَقُّ وَلْيَتَّقِ اللّٰهَ رَبَّهٗ وَلَا
يَبْخَسْ مِنْهُ شَيْـًٔا ؕ فَاِنْ كَانَ الَّذِىْ عَلَيْهِ الْحَقُّ
سَفِيْهًا اَوْ ضَعِيْفًا اَوْ لَا يَسْتَطِيْعُ اَنْ يُّمِلَّ هُوَ
فَلْيُمْلِلْ وَلِيُّهٗ بِالْعَدْلِ ؕ وَاسْتَشْهِدُوْا شَهِيْدَيْنِ
مِنْ رِّجَالِكُمْ ۚ فَاِنْ لَّمْ يَكُوْنَا رَجُلَيْنِ فَرَجُلٌ
وَّامْرَاَتٰنِ مِمَّنْ تَرْضَوْنَ مِنَ الشُّهَدَآءِ اَنْ
تَضِلَّ اِحْدٰٮهُمَا فَتُذَكِّرَ اِحْدٰٮهُمَا الْاُخْرٰى ؕ وَلَا
يَاْبَ الشُّهَدَآءُ اِذَا مَا دُعُوْا ؕ وَلَا تَسْـَٔمُوْۤا اَنْ
تَكْتُبُوْهُ صَغِيْرًا اَوْ كَبِيْرًا اِلٰۤى اَجَلِهٖ ؕ ذٰلِكُمْ اَقْسَطُ
عِنْدَ اللّٰهِ وَاَقْوَمُ لِلشَّهَادَةِ وَاَدْنٰۤى اَلَّا تَرْتَابُوْۤا
اِلَّاۤ اَنْ تَكُوْنَ تِجَارَةً حَاضِرَةً تُدِيْرُوْنَهَا
بَيْنَكُمْ فَلَيْسَ عَلَيْكُمْ جُنَاحٌ اَلَّا
تَكْتُبُوْهَا ؕ وَاَشْهِدُوْۤا اِذَا تَبَايَعْتُمْ ۖ وَلَا
يُضَآرَّ كَاتِبٌ وَّلَا شَهِيْدٌ ؕ وَاِنْ تَفْعَلُوْا فَاِنَّهٗ
فُسُوْقٌۢ بِكُمْ ؕ وَاتَّقُوا اللّٰهَ ؕ وَيُعَلِّمُكُمُ اللّٰهُ ؕ
وَاللّٰهُ بِكُلِّ شَىْءٍ عَلِيْمٌ ﴿۲۸۲﴾

डाकिन्छ तब जान अस्वीकार नगरुन् र ऋण जसको अवधि निश्चित छ, थोरै होस् अथवा धेरै (त्यसको दस्तावेज लेख्न-लेखाउनमा अल्छी नगर) । यो कुरा अल्लाहको दृष्टिमा बडो न्यायपूर्ण छ र साक्ष्यको निम्ति पनि धेरै सही बाटो हो । यसबाट तिमीलाई कुनै प्रकारको सन्देह हुनेछैन । तर हो, यदि तिमीले कुनै हातैहात व्यवहार (लिनेदिने) गर्दछौ भने (यस्ता व्यवहारहरूको) लिखत नगरे पनि तिमीमाथि कुनै दोष आउने छैन र किनबेच गर्दा पनि साक्षी राख्ने गर । दस्तावेज लेख्ने र साक्षी हुनेहरूलाई कुनै प्रकारको हानि नपुऱ्याउ । यदि तिमी यस्तो गर्दछौ भने यो तिम्रो निम्ति दुष्टतापूर्ण कर्म हुनेछ र अल्लाहसँग डर र हेर कि अल्लाहले तिमीलाई तालिम दिइरहेको छ र अल्लाह प्रत्येक कुरो जान्दछ ।

२८३) र यदि तिमी यात्रामा छौ र (दस्तावेज) लेख्ने मान्छे उपलब्ध छैन भने कुनै कुरो धितोको रूपमा राख्ने गर्नु । हो, यदि व्यवहार गर्नेहरू परस्परमा संतुष्ट छन् भने (ऋण धितो बिना पनि दिनु र ऋण लिनेले ऋणदाताको नासो (ऋणको रकम) फिर्ता दिइहालोस् र अल्लाहसँग जो कि उसको

وَإِنْ كُنْتُمْ عَلَىٰ سَفَرٍ وَّلَمْ تَجِدُوْا كَاتِبًا فَرِهٰنٌ مَّقْبُوْضَةٌ ۖ فَإِنْ أَمِنَ بَعْضُكُمْ بَعْضًا فَلْيُؤَدِّ الَّذِي اؤْتُمِنَ أَمَانَتَهٗ وَلْيَتَّقِ اللّٰهَ رَبَّهٗ ۖ وَلَا تَكْتُمُوا الشَّهَادَةَ ۖ وَمَنْ يَّكْتُمْهَا فَإِنَّهٗٓ اٰثِمٌ قَلْبُهٗ ۖ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ عَلِيْمٌ ﴿٢٨٣﴾

पालनकर्ता हो, डर मान्ने गरोस् साक्ष्यलाई नलुकाउनु, जसले त्यसलाई लुकाउँछ, उसको हृदय गुनहगार (पापी) हुनेछ । अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापहरू जान्दछ ।

لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ وَاِنْ تُبْدُوْا مَا فِيْٓ اَنْفُسِكُمْ اَوْ تُخْفُوْهُ يُحَاسِبْكُمْ بِهِ اللّٰهُ ؕ فَيَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٢٨٤﴾

२८४) जेजति आकाशहरू र जे जमीनमा छन्, सबै अल्लाहकै सम्पत्ति हुन् । तिमीले आफ्नो मनभित्रका कुरा प्रकट गरे वा लुकाए पनि, अल्लाहले तिमीसँग त्यसको हिसाब लिनेछ । अनि उसले जसलाई चाहन्छ क्षमा प्रदान गर्दछ र जसलाई चाहन्छ दण्ड दिन्छ र प्रत्येक कुरामाथि अल्लाहको शासन छ ।

اٰمَنَ الرَّسُوْلُ بِمَآ اُنْزِلَ اِلَيْهِ مِنْ رَّبِّهٖ وَالْمُؤْمِنُوْنَ ؕ كُلٌّ اٰمَنَ بِاللّٰهِ وَمَلٰٓئِكَتِهٖ وَكُتُبِهٖ وَرُسُلِهٖ ۟ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ مِّنْ رُّسُلِهٖ ۟ وَقَالُوْا سَمِعْنَا وَاَطَعْنَا غُفْرَانَكَ رَبَّنَا وَاِلَيْكَ الْمَصِيْرُ ﴿٢٨٥﴾

२८५) (हाम्रा) रसूलले त्यस कुरामा ईमान ल्याउनु भयो जुन उनीमाथि अल्लाहको तर्फबाट उतारियो र मोमिनहरूले पनि ईमान ल्याए, यिनीहरूसबै अल्लाह, उसका फरिश्ताहरू, उसका किताबहरू र उसका पैगम्बरहरूमाथि ईमान ल्याए । हामी उसका पैगम्बरहरूमध्ये कसैको बीच भेदभावको व्यवहार गर्दैनौं, उनीहरूले भने कि हामीले सुन्यौ र मान्यौ हामीले क्षमाको लागि प्रार्थना गर्दछौं । हे पालनकर्ता ! र तिमी छेउ नै फर्केर जानु छ ।

لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا اِلَّا وُسْعَهَا ؕ لَهَا مَا كَسَبَتْ وَعَلَيْهَا مَا اكْتَسَبَتْ ؕ رَبَّنَا لَا تُؤَاخِذْنَآ اِنْ نَّسِيْنَآ اَوْ اَخْطَاْنَا ۚ رَبَّنَا وَلَا تَحْمِلْ عَلَيْنَآ اِصْرًا كَمَا حَمَلْتَهٗ عَلَى الَّذِيْنَ مِنْ قَبْلِنَا ۚ رَبَّنَا وَلَا تُحَمِّلْنَا مَا لَا طَاقَةَ لَنَا بِهٖ ۚ وَاعْفُ عَنَّا ۥ وَاغْفِرْ لَنَا ۥ وَارْحَمْنَا ۥ اَنْتَ مَوْلٰىنَا فَانْصُرْنَا عَلَى الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٢٨٦﴾

२८६) अल्लाहले कसैलाई उसको शक्तिभन्दा बढी कष्ट दिदैन । जुन नेकीको काम उसले गर्दछ त्यसको प्रतिफल पाउँछ र जो पाप कर्म गर्दछ त्यसको परिणाम भोग्ने छ । हे हाम्रा रब ! यदि हामीबाट कुनै भूल वा त्रुटि भएको भए हामीलाई दोषी न ठहराउनु । हे पालनकर्ता ! हामीमाथि त्यस्तो भार नराख्नु जस्तो कि तिमीले हामीभन्दा अगाडिका मानिसहरूमाथि राखेका थियौ । हे हाम्रा रब ! जुन भार बोक्न सक्ने क्षमता हामीमा छैन त्यस्तो भारी हामीमाथि नराख्नु र (हे हाम्रा रब !) हाम्रा भूलत्रुटिको निमित्त हामीलाई क्षमा गर र मुक्ति प्रदान गर र हामीमाथि दया गर, तिमी नै हाम्रो स्वामी हौ तसर्थ हामीलाई काफिरहरूमाथि विजय प्रदान गर ।



# ३- सूरतु आले इम्रान



सूरतु आले इम्रान मदनी हो यसमा २०० आयात र २० रुकूअ् छन्

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु र अति कृपालु छ ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ्-लाम-मीम

الٓمّٓ ﴿١﴾

२) अल्लाह, नै वास्तविक सत्य पूजनीय छ, उस बाहेक अरु कोही पूज्य छैन, जो सधैं रहिरहने र सबैको रक्षक हो ।

اللّٰهُ لَاۤ اِلٰهَ اِلَّا هُوَ الْحَيُّ الْقَيُّوْمُ ﴿٢﴾

३) उसले (हे मोहम्मद स. अ.) तपाईमाथि सत्यताको साथ ग्रन्थ (कुरआन) उतार्यो, जसले कि आफू भन्दा पहिलाका (किताबहरूको) पुष्टि गर्दछ र उसैले तौरात र इञ्जील उतार्यो ।

نَزَّلَ عَلَيْكَ الْكِتٰبَ بِالْحَقِّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ وَاَنْزَلَ التَّوْرٰىةَ وَالْاِنْجِيْلَ ﴿٣﴾

४) यसभन्दा पहिला मानिसहरूको मार्गदर्शनको निम्ति पहिला (तौरात र इञ्जील) र पछि कुरआन पनि उसैले उतार्‍यो । जुन मानिसहरू अल्लाहका आयतहरू झूठो ठान्दछन्, तिनलाई कठोर सजाय हुनेछ । अल्लाह सर्वशक्तिमान र बदला लिनेवाला छ ।

مِنْ قَبْلُ هُدًى لِّلنَّاسِ وَاَنْزَلَ الْفُرْقَانَ ۬ؕ اِنَّ الَّذِيْنَ كَفَرُوْا بِاٰيٰتِ اللّٰهِ لَهُمْ عَذَابٌ شَدِيْدٌ ؕ وَاللّٰهُ عَزِيْزٌ ذُو انْتِقَامٍ ﴿٤﴾

५) नि:सन्देह अल्लाहबाट पृथ्वी र आकाशको कुनै वस्तु लुकेको छैन ।

اِنَّ اللّٰهَ لَا يَخْفٰى عَلَيْهِ شَيْءٌ فِي الْاَرْضِ وَلَا فِي السَّمَآءِ ﴿٥﴾

६) उसले आमाको गर्भमा जस्तो चाहन्छ तिम्रा रूपहरू बनाउँछ ।

هُوَ الَّذِيْ يُصَوِّرُكُمْ فِي الْاَرْحَامِ كَيْفَ يَشَآءُ ؕ لَاۤ اِلٰهَ اِلَّا هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٦﴾

ऊ सर्वशक्तिमान र बुद्धिमता सम्पन्न छ । उस बाहेक वास्तवमा अरु कोहि पूजाको योग्य छैन ।

هُوَ الَّذِيٓ أَنزَلَ عَلَيۡكَ ٱلۡكِتَٰبَ مِنۡهُ ءَايَٰتٞ مُّحۡكَمَٰتٌ هُنَّ أُمُّ ٱلۡكِتَٰبِ وَأُخَرُ مُتَشَٰبِهَٰتٞۖ فَأَمَّا ٱلَّذِينَ فِي قُلُوبِهِمۡ زَيۡغٞ فَيَتَّبِعُونَ مَا تَشَٰبَهَ مِنۡهُ ٱبۡتِغَآءَ ٱلۡفِتۡنَةِ وَٱبۡتِغَآءَ تَأۡوِيلِهِۦۖ وَمَا يَعۡلَمُ تَأۡوِيلَهُۥٓ إِلَّا ٱللَّهُۗ وَٱلرَّٰسِخُونَ فِي ٱلۡعِلۡمِ يَقُولُونَ ءَامَنَّا بِهِۦ كُلّٞ مِّنۡ عِندِ رَبِّنَاۗ وَمَا يَذَّكَّرُ إِلَّآ أُوْلُواْ ٱلۡأَلۡبَٰبِ ۝٧

७) अल्लाहले नै तिमीलाई किताब प्रदान गऱ्यो, जसका केही आधारभूत आयात छन्, त्यही वास्तविक किताब हो र केही सामान्य प्रकृतिका छन् । अनि जसको हृदयमा कुटिलता हुन्छ तिनले फसाद गर्ने मनसाय र गलत व्याख्याको नीयतले यिनै सामान्य आयातका पछाडि लागि पर्दछन् । तर यसको वास्तविक अर्थ अल्लाह बाहेक अरु कसैलाई थाहा छैन । जुन मानिसहरू ठोस र गहिरो ज्ञान राख्दछन्, तिनीहरू भन्दछन् कि हामीले उनीमाथि आस्था राखीसकेका छौं । यी सबै हाम्रा पालनकर्ताबाट हुन्, नसीहत त बुझ्नेले मात्र ग्रहण गर्दछन् ।

رَبَّنَا لَا تُزِغۡ قُلُوبَنَا بَعۡدَ إِذۡ هَدَيۡتَنَا وَهَبۡ لَنَا مِن لَّدُنكَ رَحۡمَةًۚ إِنَّكَ أَنتَ ٱلۡوَهَّابُ ۝٨

८) हे हाम्रा रब ! तिमीले हामीलाई सही मार्ग निर्देशन प्रदान गरिसके पछि त्यस उपरान्त हाम्रो हृदयमा विकृति उत्पन्न नगर । र हामीलाई आफू कहाँबाट कृपा प्रदान गर, निःसन्देह तिमी नै परम दानी हौ ।

رَبَّنَآ إِنَّكَ جَامِعُ ٱلنَّاسِ لِيَوۡمٖ لَّا رَيۡبَ فِيهِۚ إِنَّ ٱللَّهَ لَا يُخۡلِفُ ٱلۡمِيعَادَ ۝٩

९) हे पालनकर्ता ! तिमीले निःसन्देह त्यसदिन जसको आगमनमा कुनै शंका छैन, सबै मानिसहरूलाई

भेला गराउने छौ । निःसन्देह अल्लाह आफ्नो वाचा विपरित गर्दैन ।

१०) काफिरहरूलाई तिनको धन सम्पत्ति र तिनका सन्तानले अल्लाहको (सजायबाट) तिनलाई बचाउन सक्दैनन् । र यी मानिसहरू नै नर्कको आगोका इन्धन हुनेछन् ।

إِنَّ الَّذِينَ كَفَرُوا لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَآ
أَوْلَادُهُمْ مِّنَ اللَّهِ شَيْـًٔا ۖ وَأُولَٰٓئِكَ هُمْ وَقُودُ
النَّارِ ﴿١٠﴾

११) यिनको अवस्था पनि आले फिरऔन र तिनीभन्दा अगाडिका मानिसहरू जस्तो हुनेछ, जसले हाम्रा आयातहरूलाई झूठ ठाने, अनि अल्लाहले पनि तिनलाई तिनका गुनाहले गर्दा सजायको निम्ति समातिहाल्यो र अल्लाह कठोर सजाय दिनेवाला छ ।

كَدَأْبِ آلِ فِرْعَوْنَ ۙ وَالَّذِينَ مِن قَبْلِهِمْ ۚ كَذَّبُوا
بِآيَاتِنَا فَأَخَذَهُمُ اللَّهُ بِذُنُوبِهِمْ ۗ وَاللَّهُ شَدِيدُ
الْعِقَابِ ﴿١١﴾

१२) (हे पैगम्बर !) काफिरहरूलाई भनिदिनुस् कि तिमीहरू छिटै पराजित हुनेछौ र अन्तिम दिन नर्कको बाटोमा जम्मा गरिने छौ, (जुन कि) साह्रै नराम्रो ठाउँ हो ।

قُل لِّلَّذِينَ كَفَرُوا سَتُغْلَبُونَ وَتُحْشَرُونَ إِلَىٰ
جَهَنَّمَ ۚ وَبِئْسَ الْمِهَادُ ﴿١٢﴾

१३) तिम्रा निम्ति दुई समूह, जो कि (बद्रको युद्धको दिन) आपसमा संघर्षरत भए (अल्लाहको शक्तिको) प्रतीक थियो । एक समूह थियो, त्यो अल्लाहको मार्गमा युद्धरत थियो, र दोस्रो समूह काफिरहरूको थियो जसले तिनलाई आफ्ना आँखाले आफूभन्दा दोब्बर देखिराखेका थिए । र अल्लाह आफ्नो तर्फबाट

قَدْ كَانَ لَكُمْ آيَةٌ فِي فِئَتَيْنِ الْتَقَتَا ۖ فِئَةٌ تُقَاتِلُ
فِي سَبِيلِ اللَّهِ وَأُخْرَىٰ كَافِرَةٌ يَرَوْنَهُم مِّثْلَيْهِمْ رَأْيَ
الْعَيْنِ ۚ وَاللَّهُ يُؤَيِّدُ بِنَصْرِهِ مَن يَشَاءُ ۗ إِنَّ فِي
ذَٰلِكَ لَعِبْرَةً لِّأُولِي الْأَبْصَارِ ﴿١٣﴾

जसलाई चाहन्छ सहयोग पुऱ्याउँछ। निःसन्देह यसमा आँखा भएकाहरूका लागि ठूलो पाठ छ।

१४) मानिसहरूमा तिनलाई मन पर्ने चीजहरूको माया समाविष्ट गराइयो अर्थात् स्वास्नीहरू, छोराहरू र सुनचाँदीको खर खजाना र शान्दार घोडाहरू, र पशुहरू र खेतीपाती यी संसारिक जिन्दगीका सामान हुन, र राम्रो फर्कने ठाउँ त अल्लाह कहाँ नै छ।

زُيِّنَ لِلنَّاسِ حُبُّ الشَّهَوٰتِ مِنَ النِّسَآءِ وَالْبَنِيْنَ وَالْقَنَاطِيْرِ الْمُقَنْطَرَةِ مِنَ الذَّهَبِ وَالْفِضَّةِ وَالْخَيْلِ الْمُسَوَّمَةِ وَالْاَنْعَامِ وَالْحَرْثِ ؕ ذٰلِكَ مَتَاعُ الْحَيٰوةِ الدُّنْيَا ۚ وَاللّٰهُ عِنْدَهٗ حُسْنُ الْمَاٰبِ ﴿١٤﴾

१५) (हे पैगम्बर ! तिनीहरूसित) भनिदिनुस् कि के म तिमीलाई यस्तो कुरा बताउँ जुन यी कुराहरू भन्दा धेरै राम्रो छ ? धर्मपरायण मानिसहरूका निम्ति अल्लाह कहाँ स्वर्ग छ जहाँ बगैंचाहरू छन् जस मुनि नहरहरू बगिराखेका छन् जहाँ तिनीहरू सँधै बस्ने छन्, र पवित्र स्वास्नीहरू छिन् र अल्लाहको प्रसन्नता छ। अल्लाह आफ्ना असल भक्तहरूलाई देखिरहेको छ।

قُلْ اَؤُنَبِّئُكُمْ بِخَيْرٍ مِّنْ ذٰلِكُمْ ؕ لِلَّذِيْنَ اتَّقَوْا عِنْدَ رَبِّهِمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا وَاَزْوَاجٌ مُّطَهَّرَةٌ وَّرِضْوَانٌ مِّنَ اللّٰهِ ؕ وَاللّٰهُ بَصِيْرٌۢ بِالْعِبَادِ ۚ ﴿١٥﴾

१६) जो अल्लाहसित विन्ति गर्दछन् कि हे पालनकर्ता ! हामीले ईमान ल्यायौं, तसर्थ हाम्रा त्रुटिहरू क्षमा गर, र नर्कको यातनाबाट बचाऊ।

اَلَّذِيْنَ يَقُوْلُوْنَ رَبَّنَآ اِنَّنَآ اٰمَنَّا فَاغْفِرْ لَنَا ذُنُوْبَنَا وَقِنَا عَذَابَ النَّارِ ۚ ﴿١٦﴾

१७) यी यस्ता मानिसहरू हुन् जसले धैर्य राख्दछन् र सत्य बोल्दछन् र आज्ञा पालक हुन् र अल्लाहको

اَلصّٰبِرِيْنَ وَالصّٰدِقِيْنَ وَالْقٰنِتِيْنَ وَالْمُنْفِقِيْنَ وَالْمُسْتَغْفِرِيْنَ بِالْاَسْحَارِ ﴿١٧﴾

मार्गमा सम्पत्ति दान गर्दछन् र प्रातःकालमा आफ्ना भूल त्रुटिका लागि क्षमायाचना गर्दछन् ।

شَهِدَ اللّٰهُ اَنَّهٗ لَاۤ اِلٰهَ اِلَّا هُوَۙ وَالْمَلٰٓئِكَةُ وَاُولُوا الْعِلْمِ قَآئِمًۢا بِالْقِسْطِؕ لَاۤ اِلٰهَ اِلَّا هُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿۱۸﴾

१८) अल्लाह, फरिश्ताहरू र ज्ञानीहरूले यस कुराको गवाही दिन्छन् कि अल्लाह बाहेक अरु कोही सत्य पूजा योग्य छैन । उही न्याय कायम राख्ने वाला हो । यस्तो सर्वशक्तिमान र सर्वबुद्धि सम्पन्न बाहेक अरु कोही आराधना योग्य छैन ।

اِنَّ الدِّيْنَ عِنْدَ اللّٰهِ الْاِسْلَامُ ۗ وَمَا اخْتَلَفَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَهُمُ الْعِلْمُ بَغْيًۢا بَيْنَهُمْ ؕ وَمَنْ يَّكْفُرْ بِاٰيٰتِ اللّٰهِ فَاِنَّ اللّٰهَ سَرِيْعُ الْحِسَابِ ﴿۱۹﴾

१९) निःसन्देह अल्लाहको नजिक इस्लाम नै (साँचो) धर्म हो र अह्ले किताबले ज्ञान प्राप्त गरिसकेपछि आपसी रिस-रागको कारण विरोध गरेका हुन् र जुन मानिसले अल्लाहका आयातहरूलाई मानेनन्, अल्लाहले उसको शीघ्र हिसाब लिने छ ।

فَاِنْ حَآجُّوْكَ فَقُلْ اَسْلَمْتُ وَجْهِيَ لِلّٰهِ وَمَنِ اتَّبَعَنِ ؕ وَقُلْ لِّلَّذِيْنَ اُوْتُوا الْكِتٰبَ وَالْاُمِّيّٖنَ ءَاَسْلَمْتُمْ ؕ فَاِنْ اَسْلَمُوْا فَقَدِ اهْتَدَوْا ۚ وَاِنْ تَوَلَّوْا فَاِنَّمَا عَلَيْكَ الْبَلٰغُ ؕ وَاللّٰهُ بَصِيْرٌۢ بِالْعِبَادِ ﴿۲۰﴾

२०) (हे पैगम्बर !) तै पनि यदि यी मानिसहरू तपाईसँग वादविवाद गर्दछन् भने भनिदिनुस् म र मेरा अनुयायीहरूले सम्पूर्ण रूपमा अल्लाहमा समर्पित भइसकेका छौं र किताबवाला र अनपढहरूसित भनि दिनुस् कि के तिमीहरूले पनि इस्लाम मान्दछौ ? यदि यिनीहरू पनि अनुयायी बन्दछन् भने निःसन्देह मार्ग दर्शन प्राप्त गर्नेछन्, र यदि

मान्दैनन् भने तपाईंको काम मात्र अल्लाहको सन्देश पुऱ्याइदिने हो । अल्लाह (आफ्ना) भक्तहरूलाई राम्री देखी राखेको छ ।

إِنَّ الَّذِينَ يَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَيَقْتُلُونَ النَّبِيِّينَ بِغَيْرِ حَقٍّ وَيَقْتُلُونَ الَّذِينَ يَأْمُرُونَ بِالْقِسْطِ مِنَ النَّاسِ فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ ﴿٢١﴾

२१) जुन मानिसहहरू अल्लाहका आयतहरूलाई मान्दैनन् र अल्लाहका संदेशबाहकहरूलाई अनाधिकार मारिदिन्छन् र जसले न्यायका कुरा गर्नेहरूलाई पनि मारिदिन्छन् त हे नबी तिनलाई कष्टपूर्ण सजायको सन्देश सुनाई दिनु ।

أُولَٰئِكَ الَّذِينَ حَبِطَتْ أَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْآخِرَةِ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٢٢﴾

२२) यिनी यस्ता मानिसहरू हुन् जसका कर्महरू यस लोक र परलोक दुवैका लागि निरर्थक छन्, र तिनीहरूलाई सहायता गर्ने कोही हुने छैन ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ الْكِتَابِ يُدْعَوْنَ إِلَىٰ كِتَابِ اللَّهِ لِيَحْكُمَ بَيْنَهُمْ ثُمَّ يَتَوَلَّىٰ فَرِيقٌ مِّنْهُمْ وَهُم مُّعْرِضُونَ ﴿٢٣﴾

२३) के तिमीले तिनलाई देखेनौं जसलाई किताब (तौरात) को केही भाग दिइएको छ, र तिनीहरूको आपसी फैसलाको लागि अल्लाहको किताबतिर बोलाइनेछ, तैपनि तिनीहरूमध्ये एउटा समूहले अस्वीकार गरी अर्कैतिर मुख फर्काइहाल्छ ।

ذَٰلِكَ بِأَنَّهُمْ قَالُوا لَن تَمَسَّنَا النَّارُ إِلَّا أَيَّامًا مَّعْدُودَاتٍ وَغَرَّهُمْ فِي دِينِهِم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢٤﴾

२४) यसको कारण तिनीहरूको यो भनाई छ कि (नर्कको) आगोले हामीलाई केही दिन बाहेक बढी पोल्न सक्ने छैन, र यिनको यो मिथ्या कुराले यिनीहरूलाई धर्मको बारेमा भ्रममा राखेको छ ।

२५) अनि, त्यस बेला के अवस्था हुने छ जब हामीले तिनलाई एकत्रित गर्ने छौं ?। जसको आगमनमा कुनै शंका छैन । र प्रत्येक व्यक्तिले गरेको आ-आफ्ना कर्महरूको पूर्ण प्रतिफल पाउने छ र तिनीहरूप्रति केही पनि अत्याचार गरिने छैन ।

فكيف إذا جمعنهم ليوم لا ريب فيه ووفيت كل نفس ما كسبت وهم لا يظلمون ﴿٢٥﴾

२६) तिमी भन कि हे अल्लाह, हे ब्रह्माण्डको स्वामी ! तिमीले जसलाई चाहन्छौ राजसत्ता प्रदान गर्दछौ र जसबाट चाहन्छौ उसको सत्ता खोसिहाल्छौ र जसलाई इच्छा गर्दछौ मर्यादित बनाउँछौ र जसलाई चाहन्छौ उसलाई अपमानित गर्छौ । तिम्रै हातमा प्रत्येक किसिमका भलाई छन् । निःसन्देह तिमी प्रत्येक कुराको लागि सर्वशक्ति सम्पन्न छौं ।

قل اللهم ملك الملك تؤتي الملك من تشاء وتنزع الملك ممن تشاء وتعز من تشاء وتذل من تشاء بيدك الخير إنك على كل شيء قدير ﴿٢٦﴾

२७) तिमीले नै रातिलाई दिनमा प्रवेश गराउँछौ र दिनलाई रातिमा प्रवेश गराउँदछौ । तिमीले नै निस्प्राणमा प्राण हाल्दछौ र तिमी नै प्राणवानबाट प्राणहीन बनाउँछौ र तिमीले नै जसलाई चाहन्छौ अत्यधिक जीविका प्रदान गर्दछौ ।

تولج اليل في النهار وتولج النهار في اليل وتخرج الحي من الميت وتخرج الميت من الحي وترزق من تشاء بغير حساب ﴿٢٧﴾

२८) मोमिनहरूले ईमानवाला बाहेक अनास्थावानहरूलाई मित्र बनाउनु हुँदैन । र कसैले यस्तो गर्दछ भने त्यसको अल्लाहसँग कुनै सम्बन्ध

لا يتخذ المؤمنون الكفرين أولياء من دون المؤمنين ومن يفعل ذلك فليس من الله في شيء إلا أن تتقوا منهم تقىة ويحذركم الله نفسه وإلى الله المصير ﴿٢٨﴾

हुँदैन र त्यस अवस्था बाहेक जब कि तिमीले आफूलाई त्यस नोक्सानबाट बचाउन चाहन्छौ । र अल्लाहले तिमीलाई आफ्नो डर देखाई रहेछ । र अल्लाहतिरै नै फर्केर जानु छ ।

قُلْ إِنْ تُخْفُوا مَا فِي صُدُورِكُمْ أَوْ تُبْدُوهُ يَعْلَمْهُ اللَّهُ ۗ وَيَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٩﴾

२९) (हे पैगम्बर !) भनि दिनुस् ! कि तिमीले कुनै कुरा आफ्नो छातीभित्र लुकाई राख वा प्रकट गर, अल्लाहलाई थाहा छ । जे आकाश र पृथ्वीमा छ, सबैको बारेमा उसलाई थाहा छ । र हरेक कुरा अल्लाहको अधीनमा छ ।

يَوْمَ تَجِدُ كُلُّ نَفْسٍ مَا عَمِلَتْ مِنْ خَيْرٍ مُحْضَرًا ۛ وَمَا عَمِلَتْ مِنْ سُوءٍ تَوَدُّ لَوْ أَنَّ بَيْنَهَا وَبَيْنَهُ أَمَدًا بَعِيدًا ۗ وَيُحَذِّرُكُمُ اللَّهُ نَفْسَهُ ۗ وَاللَّهُ رَءُوفٌ بِالْعِبَادِ ﴿٣٠﴾

३०) जुनदिन प्रत्येक व्यक्ति आफ्ना सत्कर्मको र आफ्नो दुष्कर्मको फल आफ्नो अगाडि पाउनेछ । तब उसले कामना गर्नेछ, कि उसको र उसका पाप कर्महरूको दूरी धेरै भइदिए हुन्थ्यो । अल्लाह तिमीलाई आफ्नो डर देखाई रहेको छ र अल्लाह आफ्ना भक्तहरूप्रति अत्यन्त दयालु छ ।

قُلْ إِنْ كُنْتُمْ تُحِبُّونَ اللَّهَ فَاتَّبِعُونِي يُحْبِبْكُمُ اللَّهُ وَيَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ ۗ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ﴿٣١﴾

३१) (हे पैगम्बर ! मानिसहरूसित) भनिदिनुस् कि यदि तिमी अल्लाहलाई प्रेम गर्दछौ भने मेरो अनुशरण गर, अल्लाहले तिमीलाई प्रेम गर्नेछ र तिम्रा पापहरूलाई क्षमा गरिदिनेछ र अल्लाह अत्यन्त क्षमा-दान गर्ने दयालु छ ।

قُلْ أَطِيعُوا اللّٰهَ وَالرَّسُولَ ۚ فَإِنْ تَوَلَّوْا فَإِنَّ اللّٰهَ لَا يُحِبُّ الْكٰفِرِينَ ﴿٣٢﴾

३२) भनिदिनु ! कि अल्लाह र रसूलको आदेश पालन गर । यदि मान्दैनन् भने अल्लाहले पनि काफिरहरूलाई प्रेम गर्दैन ।

إِنَّ اللّٰهَ اصْطَفٰى آدَمَ وَنُوحًا وَآلَ إِبْرٰهِيمَ وَآلَ عِمْرٰنَ عَلَى الْعٰلَمِينَ ﴿٣٣﴾

३३) नि:संदेह अल्लाहले आदम(अलै.), नूह (अलै.), इब्राहीम(अलै.)को वंश र इम्रानको वंशलाई सम्पूर्ण संसारका मानिसहरू मध्येबाट रोजी सक्यो ।

ذُرِّيَّةً بَعْضُهَا مِنْ بَعْضٍ ۗ وَاللّٰهُ سَمِيعٌ عَلِيمٌ ﴿٣٤﴾

३४) तिनी आपसमा एक अर्काको वंशबाट छन् । र अल्लाह सुन्दछ र जान्दछ।

إِذْ قَالَتِ امْرَأَتُ عِمْرٰنَ رَبِّ إِنِّي نَذَرْتُ لَكَ مَا فِي بَطْنِي مُحَرَّرًا فَتَقَبَّلْ مِنِّي ۚ إِنَّكَ أَنْتَ السَّمِيعُ الْعَلِيمُ ﴿٣٥﴾

३५) (स्मरणीय छ) जब इम्रानको स्वास्नीले भनिन् कि हे पालनकर्ता ! जुन (शिशु) मेरो गर्भमा छ, त्यसलाई म तिम्रो नाममा आजाद (स्वतन्त्र) गर्दछु । त्यसलाई तिमी मेरो तर्फबाट स्वीकार गर । निश्चयनै तिमी सबै सुन्ने (र) सबै जान्ने वाला हौ ।

فَلَمَّا وَضَعَتْهَا قَالَتْ رَبِّ إِنِّي وَضَعْتُهَا أُنْثٰى ۗ وَاللّٰهُ أَعْلَمُ بِمَا وَضَعَتْ ۗ وَلَيْسَ الذَّكَرُ كَالْأُنْثٰى ۚ وَإِنِّي سَمَّيْتُهَا مَرْيَمَ وَإِنِّي أُعِيذُهَا بِكَ وَذُرِّيَّتَهَا مِنَ الشَّيْطٰنِ الرَّجِيمِ ﴿٣٦﴾

३६) जब तिनले छोरी जन्माइन, त तिनले भन्न थालिन कि हे पालनकर्ता ! मैले त छोरी पाएकी छु । र जे जन्मएको थियो, त्यो अल्लाहलाई थाहा नै छ । र छोरी छोरा जस्तो हुन सक्दैनथ्यो । मैले उसको नाम मरियम राखेको छु र मैले उसलाई र उसको सन्तानलाई तिरस्कृत शैतानबाट मुक्त राख्न् तिम्रो शरणमा दिन्छु ।

३७) त पालनहारले त्यसलाई सहर्ष स्वीकार गऱ्यो र त्यसलाई राम्री हेर चाह प्रदान गऱ्यो र जकरीया (अलै.)लाई उसको हेरचाह गर्नेवाला बनायो । जकरीया(अलै.) जतिखेर पनि उसको कोठाभित्र जान्थे, पासमा खाना पाउँदथे । उनले मरियमसँग सोध्ने गर्दथे कि मरियम ! यो खाना तिम्रो पासमा कहाँबाट आउँछ ? उनी भन्थिन कि अल्लाह कहाँबाट आउँछ । निःसन्देह जसलाई अल्लाह चाहन्छ प्रशस्त रोजी प्रदान गर्दछ ।

فَتَقَبَّلَهَا رَبُّهَا بِقَبُولٍ حَسَنٍ وَأَنْبَتَهَا نَبَاتًا حَسَنًا وَكَفَّلَهَا زَكَرِيَّا ۖ كُلَّمَا دَخَلَ عَلَيْهَا زَكَرِيَّا الْمِحْرَابَ وَجَدَ عِنْدَهَا رِزْقًا ۖ قَالَ يَا مَرْيَمُ أَنَّىٰ لَكِ هَٰذَا ۖ قَالَتْ هُوَ مِنْ عِنْدِ اللَّهِ ۖ إِنَّ اللَّهَ يَرْزُقُ مَنْ يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٣٧﴾

३८) यसैबेला जकरीया(अलै.)ले आफ्ना पालनकर्तासित प्रार्थना गरे, कि हे मेरो पालनकर्ता ! मलाई आफ्नो तर्फबाट पवित्र पुत्र प्रदान गर । निःसन्देह तिमी प्रार्थना सुन्ने वाला हौ ।

هُنَالِكَ دَعَا زَكَرِيَّا رَبَّهُ ۖ قَالَ رَبِّ هَبْ لِي مِنْ لَدُنْكَ ذُرِّيَّةً طَيِّبَةً ۖ إِنَّكَ سَمِيعُ الدُّعَاءِ ﴿٣٨﴾

३९) उनी अझै कोठामा उभिई नमाज पढी राखेका थिए कि कोठामा यत्तिकैमा फरिश्ताहरूले उहाँलाई आवाज दिए कि (जकरिया !) अल्लाहले तिमीलाई यहयाको निश्चित शुभ सन्देश दिन्छ, जसले कि अल्लाहको वचनलाई प्रमाणित गर्नेछ र नायक हुनेछ र लिप्सा मुक्त अल्लाहको नबी अनि सत्य निष्ठावान मानिस हुनेछ ।

فَنَادَتْهُ الْمَلَائِكَةُ وَهُوَ قَائِمٌ يُصَلِّي فِي الْمِحْرَابِ أَنَّ اللَّهَ يُبَشِّرُكَ بِيَحْيَىٰ مُصَدِّقًا بِكَلِمَةٍ مِنَ اللَّهِ وَسَيِّدًا وَحَصُورًا وَنَبِيًّا مِنَ الصَّالِحِينَ ﴿٣٩﴾

قَالَ رَبِّ أَنَّىٰ يَكُونُ لِي غُلَامٌ وَقَدْ بَلَغَنِيَ الْكِبَرُ وَامْرَأَتِي عَاقِرٌ ۖ قَالَ كَذَٰلِكَ اللَّهُ يَفْعَلُ مَا يَشَاءُ ﴿٤٠﴾

४०) ज़करीयाले भनेः, हे पालनकर्ता ! मलाई पुत्र प्राप्ति कसरी हुन्छ जब कि म धेरै बुढो भइसकेको छु र मेरो स्वास्नी बाँझो छिन् । अल्लाहको आदेश भयो, यस्तै प्रकारले, अल्लाहले जे चाहदछ गर्दछ ।

قَالَ رَبِّ اجْعَل لِّي آيَةً ۖ قَالَ آيَتُكَ أَلَّا تُكَلِّمَ النَّاسَ ثَلَاثَةَ أَيَّامٍ إِلَّا رَمْزًا ۗ وَاذْكُر رَّبَّكَ كَثِيرًا وَسَبِّحْ بِالْعَشِيِّ وَالْإِبْكَارِ ﴿٤١﴾

४१) (जकरीया (अलै.)ले भने, परवरदिगार ! (मेरो लागि) उसको कुनै निशानी निर्धारित गर । अल्लाहले भन्यो, निशानी यो हो कि तिमी मानिसहरूसित तीन दिनसम्म संकेत बाहेक कुरा नगर्नु । (ती दिनहरूमा) तिमी बढीभन्दा बढी आफ्नो पालनकर्ताको स्मरण गर्नु र बिहान बेलुका उसैको नाम लिने गर ।

وَإِذْ قَالَتِ الْمَلَائِكَةُ يَا مَرْيَمُ إِنَّ اللَّهَ اصْطَفَاكِ وَطَهَّرَكِ وَاصْطَفَاكِ عَلَىٰ نِسَاءِ الْعَالَمِينَ ﴿٤٢﴾

४२) र जब दूतहरूले (मरियमसित) भने कि मरियम अल्लाहले तिमीलाई रोजेको छ र पवित्र बनाएको छ र संसारका सबै नारीहरू मध्येबाट तिमीलाई रोजेको छ ।

يَا مَرْيَمُ اقْنُتِي لِرَبِّكِ وَاسْجُدِي وَارْكَعِي مَعَ الرَّاكِعِينَ ﴿٤٣﴾

४३) हे मरियम ! तिमीले आफ्नो परवरदिगारको आदेश पालन गर्नु र सज्दा गर्नु र रुकूअ् गर्नेहरू सँग रुकूअ् गर ।

ذَٰلِكَ مِنْ أَنبَاءِ الْغَيْبِ نُوحِيهِ إِلَيْكَ ۚ وَمَا كُنتَ لَدَيْهِمْ إِذْ يُلْقُونَ أَقْلَامَهُمْ أَيُّهُمْ يَكْفُلُ مَرْيَمَ وَمَا كُنتَ لَدَيْهِمْ إِذْ يَخْتَصِمُونَ ﴿٤٤﴾

४४) यी कुराहरू अदृश्यमा भएका समाचारहरू मध्येका हुन्, जसलाई हामीले तिम्रो छेउमा वह्य (कुरआनका आयात)को माध्यमबाट पठाउँछौ र तिमी उनीहरूबीच

थिएनौ जब तिनीहरूले आफ्ना कलमहरू हालिराखेका थिए कि मरियमलाई कसले पाल्नेछ ? र त्यस बेला पनि तिनीहरूबीच थिएनौ, जब कि तिनीहरू आपसमा झगडा गरिराखेका थिए ।

إِذْ قَالَتِ الْمَلَٰٓئِكَةُ يَٰمَرْيَمُ إِنَّ اللَّهَ يُبَشِّرُكِ بِكَلِمَةٍ مِّنْهُ اسْمُهُ الْمَسِيحُ عِيسَى ابْنُ مَرْيَمَ وَجِيهًا فِي الدُّنْيَا وَالْآخِرَةِ وَمِنَ الْمُقَرَّبِينَ ﴿٤٥﴾

४५) जब फरिश्ताहरूले भने कि मरियम ! अल्लाहले तिमीलाई आफ्नो एउटा शब्दद्वारा (पुत्रको) शुभ समाचार दिन्छ, जसको नाम मसीह (प्रख्यात) ईसा बिन मरियम हुनेछ । संसार र आखिरतमा मर्यादित र मेरो विशिष्टहरूमध्ये एउटा हुनेछ ।

وَيُكَلِّمُ النَّاسَ فِي الْمَهْدِ وَكَهْلًا وَمِنَ الصَّٰلِحِينَ ﴿٤٦﴾

४६) उसले आमाको काँखमा हुर्केको अवस्थामा र ठूलो भएपछि दुवै अवस्थाहरूमा मानिसहरूसित कुरा गर्नेछ र ऊ सदाचारीहरू मध्येबाट हुनेछ ।

قَالَتْ رَبِّ أَنَّىٰ يَكُونُ لِي وَلَدٌ وَلَمْ يَمْسَسْنِي بَشَرٌ قَالَ كَذَٰلِكِ اللَّهُ يَخْلُقُ مَا يَشَاءُ إِذَا قَضَىٰ أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُن فَيَكُونُ ﴿٤٧﴾

४७) मरियमले भनिन् हे पालनहार: मलाई पुत्र प्राप्ति कसरी हुन्छ जब कि कुनै मनुष्यले मलाई स्पर्शसम्म पनि गरेको छैन । फरिश्ताले भने कि, अल्लाहले यस्तै जे चाहन्छ पैदा गर्दछ । जब त्यसले कुनै काम गर्न चाहन्छ त त्यसको हुकुम गर्दछ कि भइहाल, अनि त्यो भइहाल्छ ।

وَيُعَلِّمُهُ الْكِتَٰبَ وَالْحِكْمَةَ وَالتَّوْرَىٰةَ وَالْإِنجِيلَ ﴿٤٨﴾

४८) अल्लाहले उसलाई लेख्न (पढ्न) र बुद्धि प्रदान गर्नेछ र तौरात र इन्जील सिकाउने छ ।

وَرَسُولًا إِلَىٰ بَنِي إِسْرَائِيلَ أَنِّي قَدْ جِئْتُكُم بِآيَةٍ مِّن رَّبِّكُمْ ۖ أَنِّي أَخْلُقُ لَكُم مِّنَ الطِّينِ كَهَيْئَةِ الطَّيْرِ فَأَنفُخُ فِيهِ فَيَكُونُ طَيْرًا بِإِذْنِ اللَّهِ ۖ وَأُبْرِئُ الْأَكْمَهَ وَالْأَبْرَصَ وَأُحْيِي الْمَوْتَىٰ بِإِذْنِ اللَّهِ ۖ وَأُنَبِّئُكُم بِمَا تَأْكُلُونَ وَمَا تَدَّخِرُونَ فِي بُيُوتِكُمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٤٩﴾

४९) र ऊ बनी इस्राईल तिर पैगम्बर भएर जानेछ । (भन्नेछ) कि म तिमीहरू छेउ तिम्रो पालनहारको तर्फबाट निशानी लिएर आएको छु । त्यो के भने तिम्रो अगाडि माटोको पंक्षीको रूपका आकार बनाउँछु । फेरि त्यसमा फुक्छु त त्यो अल्लाहको आदेशले (साँच्चै) पंक्षी भइहाल्छ । र अल्लाहको आदेशले म जन्मै देखिको अन्धो र महारोगीलाई स्वस्थ्य पारिदिन्छु र मुर्दामा प्राण हालिदिन्छु र जे जति तिमी खान्छौ र जेजति आफ्ना घरहरूमा थुपारेर राखेका छौ, सबै तिमीलाई बताई दिन्छु । यदि तिमी ईमान ल्याएको भए यी कुराहरूमा तिम्रा निम्ति अल्लाहको सामर्थ्यको निशानी छ ।

وَمُصَدِّقًا لِّمَا بَيْنَ يَدَيَّ مِنَ التَّوْرَاةِ وَلِأُحِلَّ لَكُم بَعْضَ الَّذِي حُرِّمَ عَلَيْكُمْ ۚ وَجِئْتُكُم بِآيَةٍ مِّن رَّبِّكُمْ فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿٥٠﴾

५०) र म त्यसलाई पुष्टि गर्दछु जुन मेरो अगाडि तौरात छ र यस कारणले पनि म आएको छु कि केही कुराहरू जुन कि तिम्रो निम्ति वर्जित थिए, तिनलाई ग्राह्य (हलाल) बनाई दिऊँ र म त तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो लागि निशानी लिएर आएको छु। यसर्थ तिमी अल्लाहसित डर मान र मैले भनेको मान ।

إِنَّ اللَّهَ رَبِّي وَرَبُّكُمْ فَاعْبُدُوهُ ۗ هَٰذَا صِرَاطٌ مُّسْتَقِيمٌ ﴿٥١﴾

५१) कुनै सन्देह छैन कि अल्लाह नै मेरो र तिम्रो पालनहार हो, त्यसैले

तिमी सबै उसैको उपासना गर । यही नै सत्य मार्ग हो ।

فَلَمَّآ أَحَسَّ عِيسَىٰ مِنْهُمُ الْكُفْرَ قَالَ مَنْ أَنصَارِيٓ إِلَى اللّٰهِ ۖ قَالَ الْحَوَارِيُّونَ نَحْنُ أَنصَارُ اللّٰهِ ۚ آمَنَّا بِاللّٰهِ ۚ وَاشْهَدْ بِأَنَّا مُسْلِمُونَ ﴿٥٢﴾

५२) तर जब ईसा(अलै.)ले उनीहरूको अनास्था सूचक नियतको अनुभव गर्नुभयो त भन्न थाले कि अल्लाहको मार्गमा मेरो सहायता गर्ने को-को छन् ? हवारीहरूले जवाफ दिए कि हामी अल्लाहको मार्गको पक्षधर हौं । हामी अल्लाहमाथि आस्था राख्यौं र तपाई साक्षी हुनु कि हामी आदेश पालन गर्नेवाला हौ ।

رَبَّنَآ آمَنَّا بِمَآ أَنزَلْتَ وَاتَّبَعْنَا الرَّسُولَ فَاكْتُبْنَا مَعَ الشّٰهِدِينَ ﴿٥٣﴾

५३) हे हाम्रो पालनकर्ता पूजनीय ! हामीले तिमीले नाजिल गरेको किताबमाथि पूर्ण विश्वास गर्दछौ र तिम्रो पैगम्बरका अनुयायी बनिसकेका छौं । तसर्थ हामीलाई साक्षीदिनेहरूमा लेखिहाल ।

وَمَكَرُوا وَمَكَرَ اللّٰهُ ۖ وَاللّٰهُ خَيْرُ الْمٰكِرِينَ ﴿٥٤﴾

५४) तिनीहरूले षडयन्त्रपूर्ण योजना बनाए, र अल्लाहले पनि त्यसबाट बचाउने योजना बनायो, र अल्लाह सबैभन्दा राम्रो योजनाकार हो ।

إِذْ قَالَ اللّٰهُ يٰعِيسَىٰٓ إِنِّي مُتَوَفِّيكَ وَرَافِعُكَ إِلَيَّ وَمُطَهِّرُكَ مِنَ الَّذِينَ كَفَرُوا وَجَاعِلُ الَّذِينَ اتَّبَعُوكَ فَوْقَ الَّذِينَ كَفَرُوٓا إِلَىٰ يَوْمِ الْقِيٰمَةِ ۖ ثُمَّ إِلَيَّ مَرْجِعُكُمْ فَأَحْكُمُ بَيْنَكُمْ فِيمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٥٥﴾

५५) जब अल्लाहबाट आदेश भयो कि ईसा । मैले तिम्रो संसारमा रहने अवधि पूरा गरी तिमीलाई आफूतिर उठाउने र तिमीलाई काफिरहरूबाट पवित्र गर्नेछु । र, तिम्रो अनुशरण गर्नेहरूलाई काफिरहरू भन्दा शक्तिशाली बनाउने छु कयामतको दिन सम्म, अनि तिमी सबै म छेउ

फर्केर आउनेछौ, त जुन कुरामा तिमीहरू विवाद गर्दथ्यौ, त्यस दिन त्यसको निर्णय मैले नै गर्नेछु ।

५६) फेरि अनास्थावानहरूलाई संसार र आखिरत दुवैमा कठोर सजाय दिनेछु र तिनको कोही सहायक हुँदैन ।

فَأَمَّا الَّذِينَ كَفَرُوا فَأُعَذِّبُهُمْ عَذَابًا شَدِيدًا فِي الدُّنْيَا وَالْآخِرَةِ ۖ وَمَا لَهُمْ مِنْ نَاصِرِينَ ﴿٥٦﴾

५७) र जसले ईमान ल्याएर सत्कर्म गरिराखे, तिनलाई अल्लाह पूर्ण रूपले त्यसको प्रतिफल प्रदान गर्नेछ र अल्लाहले अन्याय गर्नेहरूलाई प्रेम गर्दैन ।

وَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَيُوَفِّيهِمْ أُجُورَهُمْ ۗ وَاللَّهُ لَا يُحِبُّ الظَّالِمِينَ ﴿٥٧﴾

५८) (हे मोहम्मद स.अ.!) यो जुन हामीले तिम्रो सामु पढ्दैछौं आयतहरू हुन् र बुद्धिमतापूर्ण निर्देशनहरू हुन् ।

ذَٰلِكَ نَتْلُوهُ عَلَيْكَ مِنَ الْآيَاتِ وَالذِّكْرِ الْحَكِيمِ ﴿٥٨﴾

५९) ईसा(अलै.)को हाल अल्लाह छेउ आदम(अलै.)को जस्तै छ जसलाई माटोले तयार गरी आदेश गरे कि भइहाल अनि ऊ (मानव) भई हाल्यो ।

إِنَّ مَثَلَ عِيسَىٰ عِنْدَ اللَّهِ كَمَثَلِ آدَمَ ۖ خَلَقَهُ مِنْ تُرَابٍ ثُمَّ قَالَ لَهُ كُنْ فَيَكُونُ ﴿٥٩﴾

६०) तिम्रो पालनकर्ताबाट सत्य यही नै हो । तसर्थ खबरदार तिमी कहिल्यै शंका गर्नेहरूमध्येको नहुनु ।

الْحَقُّ مِنْ رَبِّكَ فَلَا تَكُنْ مِنَ الْمُمْتَرِينَ ﴿٦٠﴾

६१) यसकारण जुन मानिसले तपाईनिर सत्य कुरा आई गए पछि पनि तपाईसित विवाद गर्छन त तपाईले तिनीसित भन्नु कि आऊ हामी र तिमी आ-आफ्ना छोराहरू र स्त्रीहरूलाई पनि र हामी आफै पनि आऔं, अनि दुवै समूहले प्रर्थाना

فَمَنْ حَاجَّكَ فِيهِ مِنْ بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ فَقُلْ تَعَالَوْا نَدْعُ أَبْنَاءَنَا وَأَبْنَاءَكُمْ وَنِسَاءَنَا وَنِسَاءَكُمْ وَأَنْفُسَنَا وَأَنْفُسَكُمْ ثُمَّ نَبْتَهِلْ فَنَجْعَلْ لَعْنَتَ اللَّهِ عَلَى الْكَاذِبِينَ ﴿٦١﴾

गरौं र झूठाहरूमाथि अल्लाहको धिक्कार भनौं ।

إِنَّ هَٰذَا لَهُوَ الْقَصَصُ الْحَقُّ ۚ وَمَا مِنْ إِلَٰهٍ إِلَّا
اللَّهُ ۚ وَإِنَّ اللَّهَ لَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٦٢﴾

६२) निश्चय नै यी भनाईहरू नै सत्य हुन् र अल्लाह बाहेक अरु कोही पूजा योग्य छैन । निःसन्देह अल्लाह सामर्थ्यपूर्ण र कौशल सम्पन्न छ ।

فَإِنْ تَوَلَّوْا فَإِنَّ اللَّهَ عَلِيمٌ بِالْمُفْسِدِينَ ﴿٦٣﴾

६३) तापनि यदि तिनीहरूले स्वीकार गर्दैनन् त अल्लाह पनि उत्पातीहरूलाई राम्ररी जान्दछ ।

قُلْ يَا أَهْلَ الْكِتَابِ تَعَالَوْا إِلَىٰ كَلِمَةٍ سَوَاءٍ
بَيْنَنَا وَبَيْنَكُمْ أَلَّا نَعْبُدَ إِلَّا اللَّهَ وَلَا نُشْرِكَ بِهِ
شَيْئًا وَلَا يَتَّخِذَ بَعْضُنَا بَعْضًا أَرْبَابًا مِنْ دُونِ
اللَّهِ ۚ فَإِنْ تَوَلَّوْا فَقُولُوا اشْهَدُوا بِأَنَّا مُسْلِمُونَ ﴿٦٤﴾

६४) भनिदिनुस् कि हे अहले किताब ! यस्तो कुरा तर्फ आउनु जुन हाम्रो र तिम्रो बीचमा समान छ । त्यो यो हो कि अल्लाह बाहेक अरु कसैलाई हामी पूजा न गरौं र उससँग अरुको साझेदारी नठहराऔं र अल्लाह बाहेक हामीमध्ये कसैलाई पालनहार नबनाऔं । यदि यिनीहरू मान्दैनन् भने भनिदिनुस् कि ! तिमी साक्षी हौ कि हामी मुसलमान हौं ।

يَا أَهْلَ الْكِتَابِ لِمَ تُحَاجُّونَ فِي إِبْرَاهِيمَ وَمَا
أُنْزِلَتِ التَّوْرَاةُ وَالْإِنْجِيلُ إِلَّا مِنْ بَعْدِهِ ۚ
أَفَلَا تَعْقِلُونَ ﴿٦٥﴾

६५) हे अहले किताब ! तिमीहरू इब्राहीमको बारेमा आपसमा किन झगडा गर्दछौ, जबकि तौरात र इन्जील उनी भन्दा पछाडि आएको हो । के तिमी फेरि पनि बुझ्दैनौ ।

هَا أَنْتُمْ هَٰؤُلَاءِ حَاجَجْتُمْ فِيمَا لَكُمْ
بِهِ عِلْمٌ فَلِمَ تُحَاجُّونَ فِيمَا لَيْسَ لَكُمْ
بِهِ عِلْمٌ ۚ وَاللَّهُ يَعْلَمُ وَأَنْتُمْ لَا تَعْلَمُونَ ﴿٦٦﴾

६६) हेर, यस्तो कुरामा तिमीहरूले झगडा गरिसक्यौ, जसको बारेमा तिमीलाई ज्ञान थियो, तर फेरि यस्ता कुरामा किन झगडा गर्दछौ जसको सम्बन्धमा तिमीलाई केही

पनि ज्ञान छैन । अल्लाहलाई थाहा छ र तिमीलाई थाहा छैन ।

مَا كَانَ إِبْرٰهِيمُ يَهُودِيًّا وَّلَا نَصْرَانِيًّا وَّلٰكِنْ كَانَ حَنِيفًا مُّسْلِمًا ۗ وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿٦٧﴾

६७) इब्राहीम (अलै.) न त यहूदी थिए न ईसाई बरु सबैबाट अलग एक सच्चा मुसलमान थिए र मुशिरकहरू मध्येका थिएनन् ।

إِنَّ أَوْلَى النَّاسِ بِإِبْرٰهِيمَ لَلَّذِينَ اتَّبَعُوهُ وَهٰذَا النَّبِيُّ وَالَّذِينَ اٰمَنُوا ۗ وَاللّٰهُ وَلِيُّ الْمُؤْمِنِينَ ﴿٦٨﴾

६८) इब्राहीमसँग सबभन्दा नजिकका सम्बन्ध राख्ने ती मानिसहरू हुन् जो उनका अनुयायी भए र यिनी पैगम्बर (मोहम्मद स.) र ती मानिसहरू जसले कि आस्था राखेका हुन् । अल्लाह नै मोमिनहरूको पक्षधर र सहारा हो ।

وَدَّتْ طَّائِفَةٌ مِّنْ أَهْلِ الْكِتٰبِ لَوْ يُضِلُّونَكُمْ ۚ وَمَا يُضِلُّونَ إِلَّا أَنْفُسَهُمْ وَمَا يَشْعُرُونَ ﴿٦٩﴾

६९) (हे इस्लामका अनुयायीहरू !) अहले किताबको एक समूह तिमीलाई असल पथबाट विचलित गराऊन चाहन्छन्, तर यिनीहरूले वास्तवमा आफैलाई पथ विचलित गरिराखेका छन् तर बुझ्दैनन् ।

يٰٓأَهْلَ الْكِتٰبِ لِمَ تَكْفُرُونَ بِاٰيٰتِ اللّٰهِ وَأَنْتُمْ تَشْهَدُونَ ﴿٧٠﴾

७०) हे अहले किताब ! तिमीहरू गवाह भए पनि अल्लाहका आयतहरूलाई किन इन्कार गरिराखेका छौं ?

يٰٓأَهْلَ الْكِتٰبِ لِمَ تَلْبِسُونَ الْحَقَّ بِالْبَاطِلِ وَتَكْتُمُونَ الْحَقَّ وَأَنْتُمْ تَعْلَمُونَ ﴿٧١﴾

७१) हे अहले किताब ! जान्दा जान्दै पनि तिमीले सत्यलाई असत्यसँग किन गुटमुट गरिराखका छौ ? र सत्यलाई किन लुकाउँछौ ?

وَقَالَتْ طَّائِفَةٌ مِّنْ أَهْلِ الْكِتٰبِ اٰمِنُوا بِالَّذِيٓ أُنْزِلَ عَلَى الَّذِينَ اٰمَنُوا وَجْهَ النَّهَارِ وَاكْفُرُوٓا اٰخِرَهُ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٧٢﴾

७२) र अहले किताबको एउटा समूहले एक अर्कासित भन्यो कि जुन पुस्तक मोमिनहरूको निम्ति उतारिएको

हो, त्यसमाथि दिनको प्रारम्भमा विश्वास गर्दै गर साँझ पर्दा इन्कार गर्दै गर, जसलेगर्दा तिनीहरू पनि (इस्लामबाट) विमुख भइहालुन् ।

७३) र आफ्नो धर्मका अनुयायीहरू बाहेक अरु कसैको विश्वास नगर्नु । हे पैगम्बर ! भनिदिनुस् कि पथ प्रदर्शन त निःसंदेह अल्लाहको पथ प्रदर्शन नै हो । तिनीहरू यो पनि भन्दछन् कि यसमा पनि विश्वास नगर्नु कि जुन कुरो तिमीलाई प्रदान गरिएको हो, त्यस्तो अरु कसैलाई प्रदान गरिन्छ । वा तिनीहरूले तिमीसँग अल्लाहको अगाडि झगडा गर्ने छन् । यो पनि भनिदिनुस् ! कि बुजुर्गि त अल्लाहको हातमा छ । उसले जसलाई चाहन्छ, प्रदान गर्दछ र अल्लाह सर्वव्यापी (र) सर्वज्ञ छ ।

وَلَا تُؤْمِنُوٓا إِلَّا لِمَن تَبِعَ دِينَكُمْ ۗ قُلْ إِنَّ الْهُدٰى هُدَى اللّٰهِ ۙ أَن يُؤْتٰىٓ أَحَدٌ مِّثْلَ مَآ أُوتِيتُمْ أَوْ يُحَآجُّوكُمْ عِندَ رَبِّكُمْ ۗ قُلْ إِنَّ الْفَضْلَ بِيَدِ اللّٰهِ ۚ يُؤْتِيهِ مَن يَشَآءُ ۗ وَاللّٰهُ وَاسِعٌ عَلِيمٌ ﴿٧٣﴾

७४) उसले आफ्नो कृपाबाट जसलाई चाहन्छ विशिष्ट स्थान प्रदान गर्दछ र अल्लाह ठूलो कृपाको स्वामी हो ।

يَّخْتَصُّ بِرَحْمَتِهِ مَن يَّشَآءُ ۗ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيمِ ﴿٧٤﴾

७५) "अहले किताब" मध्ये केही त यस्ता छन् कि यदि तिमीले उनलाई प्रशस्त धनराशी नासो स्वरूपमा राख्न दिन्छौ भने उनले तिमीलाई त्यो फिर्ता गरिदिन्छन् र केही यस्ता छन् कि उनीलाई एक

وَمِنْ أَهْلِ الْكِتٰبِ مَنْ إِن تَأْمَنْهُ بِقِنطَارٍ يُّؤَدِّهٖٓ إِلَيْكَ ۚ وَمِنْهُم مَّنْ إِن تَأْمَنْهُ بِدِينَارٍ لَّا يُؤَدِّهٖٓ إِلَيْكَ إِلَّا مَا دُمْتَ عَلَيْهِ قَآئِمًا ۗ ذٰلِكَ بِأَنَّهُمْ قَالُوا لَيْسَ عَلَيْنَا فِي الْأُمِّيّٖنَ سَبِيلٌ ۚ وَيَقُولُونَ عَلَى اللّٰهِ الْكَذِبَ وَهُمْ يَعْلَمُونَ ﴿٧٥﴾

दिनार पनि नासो राख्न दिन्छौ भने फिर्ता गर्दैनन् जबसम्म तिमीले उनको टाउकोमै बसी फिर्ता गर्न आग्रह गर्दैनौ । यो यसकारणले कि तिनीहरूले भन्दछन् कि अनपढ़हरूको सम्बन्धमा हाम्रो कुनै सोधपूछ हुनेछैन । यिनीहरूले जान्दा जान्दै अल्लाहको (विरोधमा) झूठा कुरा गर्दछन् ।

بَلٰى مَنْ اَوْفٰى بِعَهْدِهٖ وَاتَّقٰى فَاِنَّ اللّٰهَ يُحِبُّ الْمُتَّقِيْنَ ﴿٧٦﴾

७६) हो, जुन मानिसले आफूले गरेको करार पूरा गर्दछ र अल्लाहसँग डराउँछ भने, अवश्य अल्लाह इमानदारहरू संग प्रेम गर्दछ ।

اِنَّ الَّذِيْنَ يَشْتَرُوْنَ بِعَهْدِ اللّٰهِ وَاَيْمَانِهِمْ ثَمَنًا قَلِيْلًا اُولٰٓئِكَ لَا خَلَاقَ لَهُمْ فِى الْاٰخِرَةِ وَلَا يُكَلِّمُهُمُ اللّٰهُ وَلَا يَنْظُرُ اِلَيْهِمْ يَوْمَ الْقِيٰمَةِ وَلَا يُزَكِّيْهِمْ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٧﴾

७७) निःसन्देह जुन मानिसहरूले अल्लाहसँगको आफ्नो प्रतिज्ञा र शपथ सस्तो मोलमा बेच्दछन् त्यस्ताको लागि अन्तिम दिनमा कुनै भाग हुँदैन । अल्लाह तिनीहरूसित न त कुरो गर्नेछ न त कियामतका दिन तिनीहरूतिर हेर्नेछ र न त तिनलाई पवित्र पार्नेछ र तिनलाई कष्टदायक सजाय हुनेछ ।

وَاِنَّ مِنْهُمْ لَفَرِيْقًا يَّلْوٗنَ اَلْسِنَتَهُمْ بِالْكِتٰبِ لِتَحْسَبُوْهُ مِنَ الْكِتٰبِ وَمَا هُوَ مِنَ الْكِتٰبِ ۚ وَيَقُوْلُوْنَ هُوَ مِنْ عِنْدِ اللّٰهِ وَمَا هُوَ مِنْ عِنْدِ اللّٰهِ ۚ وَيَقُوْلُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ وَهُمْ يَعْلَمُوْنَ ﴿٧٨﴾

७८) विश्वास गर यिनीहरू मध्ये एउटा समूह यस्तो पनि छ जसले कि किताब पढदा आफ्ना जिब्रो बटारेर पढ्छ, ताकि तिमीलाई आभास होस् कि यिनीहरूले उतारिएको किताब पढी रहेका छन्, तर

वास्तवमा त्यो किताबबाट हुँदैन, र भन्ने गर्दछन् कि त्यो अल्लाहबाट उतारिएको हो तर त्यो अल्लाहबाट उतारिएको हैन, र तिनीहरूले अल्लाहको विरोधमा जानाजानी असत्य बोल्दछन् ।

७९) कुनै यस्तो मानिस जसलाई कि अल्लाहले किताब, तत्वज्ञान र "नबूवत" प्रदान गरेको छ यो ठिक होइन कि उसले मानिसहरूलाई भनोस् कि अल्लाहलाई छोडेर मेरा भक्त भइहाल बरु (उसले के भन्ने छ कि) तिमी सबै अल्लाहको भइहाल, यस कारण कि तिमीले उनीहरूलाई किताब सिकाउने गर्छौ र पढाउने गर्छौ ।

مَا كَانَ لِبَشَرٍ أَن يُؤْتِيَهُ اللَّهُ الْكِتَابَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ثُمَّ يَقُولَ لِلنَّاسِ كُونُوا عِبَادًا لِّي مِن دُونِ اللَّهِ وَلَٰكِن كُونُوا رَبَّانِيِّينَ بِمَا كُنتُمْ تُعَلِّمُونَ الْكِتَابَ وَبِمَا كُنتُمْ تَدْرُسُونَ ﴿٧٩﴾

८०) र कदापि हुन सक्दैन कि उसले फरिश्ता र पैगम्बरहरूलाई पूज्य बनाउने आदेश देओस् । के तिमी "मुसलमान" भइसकेपछि पनि उसले तिमीलाई काफिर हुन आदेश दिनेछ ?

وَلَا يَأْمُرَكُمْ أَن تَتَّخِذُوا الْمَلَائِكَةَ وَالنَّبِيِّينَ أَرْبَابًا ۗ أَيَأْمُرُكُم بِالْكُفْرِ بَعْدَ إِذْ أَنتُم مُّسْلِمُونَ ﴿٨٠﴾

८१) जब अल्लाहले पैगम्बरहरूसँग वाचा गरायो कि जे जति मैले तिमीलाई किताब र ज्ञान प्रदान गर्दछु, अनि तिम्रो नजिकमा कुनै पैगम्बर आउँछ जसले तिम्रो किताबको पुष्टि गर्दछ त तिमीले अवश्य नै त्यसमाथि विश्वास गर्नुपर्दछ र

وَإِذْ أَخَذَ اللَّهُ مِيثَاقَ النَّبِيِّينَ لَمَا آتَيْتُكُم مِّن كِتَابٍ وَحِكْمَةٍ ثُمَّ جَاءَكُمْ رَسُولٌ مُّصَدِّقٌ لِّمَا مَعَكُمْ لَتُؤْمِنُنَّ بِهِ وَلَتَنصُرُنَّهُ ۚ قَالَ أَأَقْرَرْتُمْ وَأَخَذْتُمْ عَلَىٰ ذَٰلِكُمْ إِصْرِي ۖ قَالُوا أَقْرَرْنَا ۚ قَالَ فَاشْهَدُوا وَأَنَا مَعَكُم مِّنَ الشَّاهِدِينَ ﴿٨١﴾

उसको मद्दत गर्नुपर्ने छ । (वाचा लिएपछि) सोध्यो, के तिमीले वचन दियौ र यस वचन बद्धतामा मलाई संरक्षणको रूपमा ठहरायौ ?। तिनीहरूले भने (हो) हामीले वाचा गऱ्यौ । (अल्लाहले) भन्यो तिमीहरू साक्षी भईराख र म पनि तिम्रो साथमा साक्षी रहने छु ।

فَمَنْ تَوَلّٰى بَعْدَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْفٰسِقُوْنَ ﴿٨٢﴾

८२) यसपछि पनि जो विमुख हुन्छन्, तिनी पथभ्रष्ट अवज्ञाकारी हुन् ।

اَفَغَيْرَ دِيْنِ اللّٰهِ يَبْغُوْنَ وَلَهٗٓ اَسْلَمَ مَنْ فِى السَّمٰوٰتِ وَالْاَرْضِ طَوْعًا وَّكَرْهًا وَّاِلَيْهِ يُرْجَعُوْنَ ﴿٨٣﴾

८३) के तिनीहरू अल्लाहको धर्म बाहेक कुनै अरु धर्मको खोजीमा छन् ? जब कि सबै आकाशहरू र पृथ्वीका सबै प्राणीहरू चाहँदा वा नचाहँदै अल्लाहको आज्ञाकारी हुन्छन् र सबै उसै तिर फर्काइनेछन् ।

قُلْ اٰمَنَّا بِاللّٰهِ وَمَآ اُنْزِلَ عَلَيْنَا وَمَآ اُنْزِلَ عَلٰٓى اِبْرٰهِيْمَ وَاِسْمٰعِيْلَ وَاِسْحٰقَ وَيَعْقُوْبَ وَالْاَسْبَاطِ وَمَآ اُوْتِىَ مُوْسٰى وَعِيْسٰى وَالنَّبِيُّوْنَ مِنْ رَّبِّهِمْ لَا نُفَرِّقُ بَيْنَ اَحَدٍ مِّنْهُمْ وَنَحْنُ لَهٗ مُسْلِمُوْنَ ﴿٨٤﴾

८४) हे मोहम्मद ! तपाई भनि दिनुस् कि हामीले अल्लाहमाथि ईमान ल्यायौं र जुन किताब हाम्रोलागि आकाशबाट उतारियो र जुन ग्रन्थहरू "इब्राहीम (अलै.)", "इसमाईल (अलै.)", "इस्हाक(अलै.)", "याकूब(अलै.)" र तिनका सन्ततिहरूलाई प्रदान गरियो र जुन किताबहरू मूसा(अलै.), ईसा(अलै.) र अन्य नबीहरूलाई तिनका पालनहारको तर्फबाट प्रदान गरियो ती सबैमाथि ईमान ल्यायौं । हामी यी पैगम्बरहरू मध्ये कसैको बारेमा भेदभावको व्यवहार गर्दैनौं

र हामी एउटै अल्लाहको आज्ञाकारी हौं ।

وَمَنْ يَّبْتَغِ غَيْرَ الْاِسْلَامِ دِيْنًا فَلَنْ يُّقْبَلَ مِنْهُ ۚ وَهُوَ فِى الْاٰخِرَةِ مِنَ الْخٰسِرِيْنَ ﴿٨٥﴾

८५) जुन मानिस इस्लाम बाहेक कुनै अन्य धर्मको खोजी गर्दछ भने उसको धर्म स्वीकार गरिने छैन र उसले आखिरतमा घाटामा पर्ने मध्येको हुनेछ ।

كَيْفَ يَهْدِى اللّٰهُ قَوْمًا كَفَرُوْا بَعْدَ اِيْمَانِهِمْ وَشَهِدُوْٓا اَنَّ الرَّسُوْلَ حَقٌّ وَّجَآءَهُمُ الْبَيِّنٰتُ ۗ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الظّٰلِمِيْنَ ﴿٨٦﴾

८६) अल्लाहले त्यस्ता मानिसहरूलाई कसरी मार्गदर्शन गर्दछ जो आफूले ईमान ल्याएको, र रसूलको सच्चाईको गवाही दिएको र आफूसंग स्पष्ट प्रमाण आई सकेपछि पनि काफिर भई दिन्छन् । अल्लाहले यस्ता अन्यायीहरूलाई मार्गदर्शन गर्दैन ।

اُولٰٓئِكَ جَزَآؤُهُمْ اَنَّ عَلَيْهِمْ لَعْنَةَ اللّٰهِ وَالْمَلٰٓئِكَةِ وَالنَّاسِ اَجْمَعِيْنَ ﴿٨٧﴾

८७) ती मानिसहरूको सजाय यो हो कि तिनीमाथि अल्लाहको र फरिश्ताहरूको र सबै मानिसहरूको धिक्कार होस् ।

خٰلِدِيْنَ فِيْهَا ۚ لَا يُخَفَّفُ عَنْهُمُ الْعَذَابُ وَلَا هُمْ يُنْظَرُوْنَ ﴿٨٨﴾

८८) सँधै धिक्कारमा नै रहनेछन् । तिनीहरूको सजाय न त कम हुनेछ न त त्यसबाट उनीहरू छुटकारा पाउने छन् ।

اِلَّا الَّذِيْنَ تَابُوْا مِنْۢ بَعْدِ ذٰلِكَ وَاَصْلَحُوْا ۗ فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٨٩﴾

८९) तर जसले त्यसपछि प्रायश्चित गरी आफ्नो अवस्था सुधार्छन् भने अल्लाह क्षमा प्रदान गर्नेवाला, दयावान छ ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا بَعْدَ اِيْمَانِهِمْ ثُمَّ ازْدَادُوْا كُفْرًا لَّنْ تُقْبَلَ تَوْبَتُهُمْ ۚ وَاُولٰٓئِكَ هُمُ الضَّآلُّوْنَ ﴿٩٠﴾

९०) निःसन्देह जुन मानिसहरूले ईमान ल्याए पछि काफिर भइहाले, अनि अनास्थातर्फ बढ्दै गए । त्यस्ताको

पश्चाताप कहिल्यै स्वीकार गरिने छैन र यी मानिसहरू नै पथ भ्रष्ट हुन् ।

إِنَّ الَّذِينَ كَفَرُوا وَمَاتُوا وَهُمْ كُفَّارٌ فَلَن يُقْبَلَ مِنْ أَحَدِهِم مِّلْءُ الْأَرْضِ ذَهَبًا وَلَوِ افْتَدَىٰ بِهِ ۗ أُولَٰئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٩١﴾

९१) जुन मानिसहरू कि "काफिर" भए र "कुफ्रकै" अवस्थामा मरिहाले, तिनीहरूमध्ये यदि कसैले मुक्तिको लागि जमिन भरिको सुनै दिए पनि कहिल्यै स्वीकार गरिने छैन । यिनीहरू नै हुन् जसको लागि कष्टदायक सजाय हुनेछ र तिनको कसैले सहायता गर्ने छैन ।

لَن تَنَالُوا الْبِرَّ حَتَّىٰ تُنفِقُوا مِمَّا تُحِبُّونَ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فَإِنَّ اللَّهَ بِهِ عَلِيمٌ ﴿٩٢﴾

९२) (मोमिनहरू !) जबसम्म जुन कुराहरू तिमीलाई प्रिय छन् (अल्लाहको मार्गमा) त्यसबाट खर्च गर्ने छैनौ, तबसम्म कदापि पुण्य प्राप्त गर्न सक्ने छैनौ र जुन कुरो तिमीले खर्च गर्नेछौ, त्यो अल्लाहलाई राम्ररी थाहा छ ।

كُلُّ الطَّعَامِ كَانَ حِلًّا لِّبَنِي إِسْرَائِيلَ إِلَّا مَا حَرَّمَ إِسْرَائِيلُ عَلَىٰ نَفْسِهِ مِن قَبْلِ أَن تُنَزَّلَ التَّوْرَاةُ ۗ قُلْ فَأْتُوا بِالتَّوْرَاةِ فَاتْلُوهَا إِن كُنتُمْ صَادِقِينَ ﴿٩٣﴾

९३) सबै खानेकुरा बनी इस्राईलको निम्ति तौरात उतारिनु भन्दा अगाडि हलाल थिए। ती कुरा बाहेक जुनकि "याकूबले(अलै.)" आफ्नो लागि वर्जित गरेका थिए । (हे मोहम्मद) भनिदिनुस् कि, यदि तिमी सत्य हौ भने तौरात ल्याऊ र त्यसलाई पढेर सुनाऊ ।

فَمَنِ افْتَرَىٰ عَلَى اللَّهِ الْكَذِبَ مِن بَعْدِ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿٩٤﴾

९४) यस पश्चात पनि जुन मानिसहरू अल्लाहमाथि झूठा आरोप लगाउँछन् ती नै अन्यायी हुन् ।

९५) भनिदेऊ ! कि अल्लाह सच्चा हो । तिमी सबै इब्राहीमको धर्मको पालना गर ।, जो मुश्रिकहरू मध्येबाट थिएनन् ।

قُلْ صَدَقَ اللّٰهُ ۗ فَاتَّبِعُوْا مِلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۭ وَمَا كَانَ مِنَ الْمُشْرِكِيْنَ ﴿٩٥﴾

९६) पहिलो घर (अल्लाहको) जुन मानिसहरूको निमित्त पूजाको लागि निर्धारित गरिएको थियो, त्यहि नै हो जुन मक्कामा अवस्थित छ, कल्याणकारी र (विश्वको निम्ति) मार्गदर्शक छ ।

اِنَّ اَوَّلَ بَيْتٍ وُّضِعَ لِلنَّاسِ لَلَّذِيْ بِبَكَّةَ مُبٰرَكًا وَّهُدًى لِّلْعٰلَمِيْنَ ﴿٩٦﴾

९७) यसमा स्पष्ट निशानीहरू छन्, जसमध्ये एउटा इब्राहीमको उभिने स्थल हो । यसमा जो प्रवेश गर्दछ, त्यसले अमन (शान्ति) प्राप्त गर्दछ । मानिसहरूमाथि अल्लाहको हक छ कि जसले त्यस घरसम्म पुग्ने सामर्थ्य राख्दछ, त्यसले हज (धार्मिक यात्रा) गरोस् । कसैले यदि यस आदेशको पालन गर्दैन भने अल्लाह पनि उस सित बरु संसारबाट निस्पृह छ ।

فِيْهِ اٰيٰتٌۢ بَيِّنٰتٌ مَّقَامُ اِبْرٰهِيْمَ ڬ وَمَنْ دَخَلَهٗ كَانَ اٰمِنًا ۭ وَلِلّٰهِ عَلَى النَّاسِ حِجُّ الْبَيْتِ مَنِ اسْتَطَاعَ اِلَيْهِ سَبِيْلًا ۭ وَمَنْ كَفَرَ فَاِنَّ اللّٰهَ غَنِيٌّ عَنِ الْعٰلَمِيْنَ ﴿٩٧﴾

९८) तपाई भन्नुस् कि हे यहुदी-ईसाई ! तिमी अल्लाहका निशानीहरूलाई किन नकारीराखेका छौ ? र अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापको साक्षी छ ।

قُلْ يٰٓاَهْلَ الْكِتٰبِ لِمَ تَكْفُرُوْنَ بِاٰيٰتِ اللّٰهِ ڰ وَاللّٰهُ شَهِيْدٌ عَلٰي مَا تَعْمَلُوْنَ ﴿٩٨﴾

९९) भन कि हे अहले किताब ! तिमी मानिसहरूलाई अल्लाहको मार्गबाट किन रोक्ने गर्दछौ र यसमा

قُلْ يٰٓاَهْلَ الْكِتٰبِ لِمَ تَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ مَنْ اٰمَنَ تَبْغُوْنَهَا عِوَجًا وَّاَنْتُمْ شُهَدَاۗءُ ۭ وَمَا اللّٰهُ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿٩٩﴾

अवगुण खोज्दैछौ, यसको बावजूद कि तिमीहरू आफै साक्षी छौ र अल्लाह तिम्रा क्रिया कलापसित असावधान छैन ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن تُطِيعُوا فَرِيقًا مِّنَ الَّذِينَ أُوتُوا الْكِتَابَ يَرُدُّوكُم بَعْدَ إِيمَانِكُمْ كَافِرِينَ ١٠٠

१००) हे मोमिनहरू ! यदि तिमी अहले किताबको कुनै समूहको कुरा मान्नेछौ भने तिनीहरूले तिमीलाई ईमान ल्याई सकेपछि पनि काफिर बनाई दिन्छन् ।

وَكَيْفَ تَكْفُرُونَ وَأَنتُمْ تُتْلَىٰ عَلَيْكُمْ آيَاتُ اللَّهِ وَفِيكُمْ رَسُولُهُ ۗ وَمَن يَعْتَصِم بِاللَّهِ فَقَدْ هُدِيَ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ١٠١

१०१) (स्पष्ट छ कि) तिमीहरूले ईमान परित्याग कसरी गर्छौ जबकि तिमीलाई अल्लाहका आयतहरू पढेर सुनाइन्छन् र तिम्रो माझमा अल्लाहका रसूल (स.) बस्दछन् र जसले अल्लाहको धर्मको डोरीलाई दृढतापूर्वक समात्यो, निःसंदेह उसलाई सोझो मार्ग प्राप्त भइसक्ने छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اتَّقُوا اللَّهَ حَقَّ تُقَاتِهِ وَلَا تَمُوتُنَّ إِلَّا وَأَنتُم مُّسْلِمُونَ ١٠٢

१०२) हे मोमिनहरू ! अल्लाहसँग यति डर जति उसँग डर्नु पर्ने हो, र हेर मर्ने बेला सम्म मुसलमान रहनु ।

وَاعْتَصِمُوا بِحَبْلِ اللَّهِ جَمِيعًا وَلَا تَفَرَّقُوا ۚ وَاذْكُرُوا نِعْمَتَ اللَّهِ عَلَيْكُمْ إِذْ كُنتُمْ أَعْدَاءً فَأَلَّفَ بَيْنَ قُلُوبِكُمْ فَأَصْبَحْتُم بِنِعْمَتِهِ إِخْوَانًا وَكُنتُمْ عَلَىٰ شَفَا حُفْرَةٍ مِّنَ النَّارِ فَأَنقَذَكُم مِّنْهَا ۗ كَذَٰلِكَ يُبَيِّنُ اللَّهُ لَكُمْ آيَاتِهِ لَعَلَّكُمْ تَهْتَدُونَ ١٠٣

१०३) सबै मिलेर अल्लाहको डोरीलाई दृढतापूर्वक समाति राख्नु र विभाजित नहुनु र अल्लाहको त्यस अनुकम्पालाई यादगर कि जब तिमी एक अर्काको शत्रु थियौ, त उसले तिम्रा हृदयहरूमा प्रेमको सृजना गर्‍यो र उसको कृपाले तिमीहरू आपसमा भाइ-भाइ

भइहाल्यौ, र तिमी आगोको खाल्डो छेउ पुगिसकेका थियौ, त अल्लाहले तिमीलाई त्यसबाट बचाइहाल्यो । यस प्रकार अल्लाहले तिमीलाई आफ्ना निशानीहरूको वर्णन गर्दछ ताकि तिमी मार्गदर्शन प्राप्त गर्नसक ।

وَلْتَكُنْ مِّنْكُمْ اُمَّةٌ يَّدْعُوْنَ اِلَى الْخَيْرِ وَيَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ ۗ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿١٠٤﴾

१०४) तिमी मध्ये एउटा समूह यस्तो हुनुपर्छ जसले कि मानिसहरूलाई सदाचारतिर आमन्त्रित गरोस् र सत्कर्मको सन्देश देओस् र दुष्कर्मबाट रोकोस् र तिनै मानिसहरूले मुक्ति प्राप्त गर्नेहरू हुन्छन् ।

وَلَا تَكُوْنُوْا كَالَّذِيْنَ تَفَرَّقُوْا وَاخْتَلَفُوْا مِنْ بَعْدِ مَا جَآءَهُمُ الْبَيِّنٰتُ ۗ وَاُولٰٓئِكَ لَهُمْ عَذَابٌ عَظِيْمٌ ﴿١٠٥﴾

१०५) तिमी ती मानिसहरू जस्तो नहुनु जसले आफू समक्ष स्पष्ट आदेशहरू आईपुगेपछि पनि एकअर्कासँग विवाद र मतभेद गर्नथाले। यी त्यस्ता मानिसहरू हुन् जसले ठूलो सजाय भोगने छन ।

يَّوْمَ تَبْيَضُّ وُجُوْهٌ وَّتَسْوَدُّ وُجُوْهٌ ۚ فَاَمَّا الَّذِيْنَ اسْوَدَّتْ وُجُوْهُهُمْ ۣ اَكَفَرْتُمْ بَعْدَ اِيْمَانِكُمْ فَذُوْقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُوْنَ ﴿١٠٦﴾

१०६) जुन दिन धेरै अनुहारहरू उज्यालो देखिने छन् र धेरै अनुहारहरू कालो हुनेछन्, त जुन मानिसहरूका अनुहार कालो हुनेछन्, (तिनीहरूसँग अल्लाहले सोध्ने छ) के तिमीहरूले ईमान ल्याए पछि फेरि कुफ्र गर्‍यौ, अब आफ्नो कुफ्रको लागि सजाय भोग ।

وَاَمَّا الَّذِيْنَ ابْيَضَّتْ وُجُوْهُهُمْ فَفِيْ رَحْمَةِ اللّٰهِ ۗ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿١٠٧﴾

१०७) जुन मानिसहरूका अनुहार उज्यालो हुनेछन् तिनीहरू अल्लाहको अनुकम्पाभित्र हुनेछन्। र त्यसैमा सधैं बास गर्नेछन् ।

१०८) हे नबी ! यी अल्लाहका सत्य आयतहरूलाई हामीले तपाईकालागि राम्ररी पढेर सुनाउँदछौं र अल्लाहले मानिसहरूमाथि अन्याय गर्न चाहँदैन ।

تِلْكَ اٰيٰتُ اللّٰهِ نَتْلُوْهَا عَلَيْكَ بِالْحَقِّ ۗ وَمَا اللّٰهُ يُرِيْدُ ظُلْمًا لِّلْعٰلَمِيْنَ ﴿١٠٨﴾

१०९) जे जति आकाशहरूमा र पृथ्वीमा छन्, सबै अल्लाहकै हुन् र सबै कुरा (अन्तमा) अल्लाहतिर नै फर्कने छन् ।

وَلِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۗ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ﴿١٠٩﴾

११०) (मोमिनहरू !) मानिसहरूका लागि पैदा गरिएको सबै सम्प्रदायहरू मध्ये तिमीहरू सबैभन्दा उत्तम हौ किनकि सत्कर्म गर्न भन्दछौ र दुष्कर्मबाट टाढा रहन सिकाउँदछौ र अल्लाहमाथि आस्था राख्दछौ र यदि अहले किताबले पनि आस्था राखेको भए तिनीहरूको निम्ति धेरै राम्रो हुने थियो । तिनीहरू मध्ये ईमानवालाहरू पनि छन् र धेरै जसो अवज्ञाकारीहरू छन् ।

كُنْتُمْ خَيْرَ اُمَّةٍ اُخْرِجَتْ لِلنَّاسِ تَاْمُرُوْنَ بِالْمَعْرُوْفِ وَتَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَتُؤْمِنُوْنَ بِاللّٰهِ ۗ وَلَوْ اٰمَنَ اَهْلُ الْكِتٰبِ لَكَانَ خَيْرًا لَّهُمْ ۗ مِنْهُمُ الْمُؤْمِنُوْنَ وَاَكْثَرُهُمُ الْفٰسِقُوْنَ ﴿١١٠﴾

१११) तिनीहरूले तिमीलाई साधारण दुःख दिन बाहेक कुनै ठूलो हानि पुऱ्याउन सक्दैनन् र यदि तिमीसँग संघर्षको अवसर आएमा भागिहाल्ने छन्, फेरि तिनीहरूले (कतैबाट) मद्दत पनि पाउने छैनन् ।

لَنْ يَّضُرُّوْكُمْ اِلَّآ اَذًى ۗ وَاِنْ يُّقَاتِلُوْكُمْ يُوَلُّوْكُمُ الْاَدْبَارَ ۗ ثُمَّ لَا يُنْصَرُوْنَ ﴿١١١﴾

११२) यिनीहरू माथि जहाँ पनि धिक्कार र अपमान भयो । अल्लाह र मानिसहरूका शरणमा गएकाहरू

ضُرِبَتْ عَلَيْهِمُ الذِّلَّةُ اَيْنَ مَا ثُقِفُوْٓا اِلَّا بِحَبْلٍ مِّنَ اللّٰهِ وَحَبْلٍ مِّنَ النَّاسِ وَبَآءُوْ بِغَضَبٍ مِّنَ اللّٰهِ وَضُرِبَتْ عَلَيْهِمُ الْمَسْكَنَةُ ۗ ذٰلِكَ بِاَنَّهُمْ

كَانُوا يَكْفُرُونَ بِآيَاتِ اللَّهِ وَيَقْتُلُونَ الْأَنْبِيَاءَ بِغَيْرِ حَقٍّ ۚ ذَٰلِكَ بِمَا عَصَوْا وَكَانُوا يَعْتَدُونَ ﴿١١٢﴾

बाहेक । यिनीहरू अल्लाहको क्रोधको भागी भइसकेका छन् । र दरिद्रताले घेरिएका छन् । यो यसकारणले कि यिनीहरूले अल्लाहका आयतहरूलाई इन्कार गर्दथे र उसका दूतहरूलाई अकारण मारिदिन्थे, यो बदला हो यिनीहरूको अवज्ञाकारिता र अत्याचारको ।

لَيْسُوا سَوَاءً ۗ مِنْ أَهْلِ الْكِتَابِ أُمَّةٌ قَائِمَةٌ يَتْلُونَ آيَاتِ اللَّهِ آنَاءَ اللَّيْلِ وَهُمْ يَسْجُدُونَ ﴿١١٣﴾

११३) यिनीहरू सबै एक समान छैनन् । बरु यी अहले किताबमध्ये केही मानिसहरू सत्यमार्गमा कायम रहनेहरू पनि छन् । जसले रातिको समयमा पनि अल्लाहका आयतहरू पढ्दछन् र सज्दा पनि गर्दछन् ।

يُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَيَأْمُرُونَ بِالْمَعْرُوفِ وَيَنْهَوْنَ عَنِ الْمُنْكَرِ وَيُسَارِعُونَ فِي الْخَيْرَاتِ ۖ وَأُولَٰئِكَ مِنَ الصَّالِحِينَ ﴿١١٤﴾

११४) यिनीहरू अल्लाहमाथि र आखिरतको दिनमा आस्था पनि राख्दछन् र सत्कर्म गर्न भन्दछन् र दुष्कर्मबाट मनाही गर्दछन् र सदाचारतिर अग्रसर हुन्छन् । यिनी सदाचारी मध्येका हुन् ।

وَمَا يَفْعَلُوا مِنْ خَيْرٍ فَلَنْ يُكْفَرُوهُ ۗ وَاللَّهُ عَلِيمٌ بِالْمُتَّقِينَ ﴿١١٥﴾

११५) यिनीहरूले जति सत्कर्म गर्दछन् त्यसको उपेक्षा गर्नु हुँदैन । र, अल्लाह आत्म संयमीहरूलाई राम्ररी जान्छ ।

إِنَّ الَّذِينَ كَفَرُوا لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَا أَوْلَادُهُمْ مِنَ اللَّهِ شَيْئًا ۖ وَأُولَٰئِكَ أَصْحَابُ النَّارِ ۚ هُمْ فِيهَا خَالِدُونَ ﴿١١٦﴾

११६) काफिरहरूका लागि तिनीहरूको धन-सम्पत्ति र सन्तान अल्लाहका नजिक केही काम लाग्दैनन् । यिनीहरू त नारकीय हुन्, सधैं त्यसैमा रहने छन् ।

مَثَلُ مَا يُنْفِقُوْنَ فِيْ هٰذِهِ الْحَيٰوةِ الدُّنْيَا كَمَثَلِ رِيْحٍ فِيْهَا صِرٌّ اَصَابَتْ حَرْثَ قَوْمٍ ظَلَمُوْٓا اَنْفُسَهُمْ فَاَهْلَكَتْهُ ۭ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰكِنْ اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿١١٧﴾

११७) यी अनास्थावादीले यो जीवनमा जुन धन खर्च गर्दछन् त्यसको उदाहरण त्यस हिउँले भरिएको बतास जस्तो छ, जुन अन्याय गर्ने मानिसहरूको खेतीको माथि चल्यो र त्यसलाई तहस नहस पारिदियो । अल्लाहले तिनीहरूमाथि कुनै अत्याचार गरेको छैन, बरु तिनीहरू आफैले आफूमाथि अत्याचार गरिराखेका छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّخِذُوْا بِطَانَةً مِّنْ دُوْنِكُمْ لَا يَاْلُوْنَكُمْ خَبَالًا ۭ وَدُّوْا مَا عَنِتُّمْ ۚ قَدْ بَدَتِ الْبَغْضَاۗءُ مِنْ اَفْوَاهِھِمْ ښ وَمَا تُخْفِيْ صُدُوْرُھُمْ اَكْبَرُ ۭ قَدْ بَيَّنَّا لَكُمُ الْاٰيٰتِ اِنْ كُنْتُمْ تَعْقِلُوْنَ ﴿١١٨﴾

११८) हे मोमिनहरू ! ईमान ल्याएका बाहेक अरुलाई आफ्नो घनिष्ट मित्र नबनाऊ । तिमी त देख्दैनौ, यी मानिसहरूले तिमीहरूलाई बर्बाद पार्नमा कुनै कसर बाँकी राख्दैनन् र यिनीहरू चाहन्छन् कि (जसरी पनि) तिमीलाई कष्ट पुगोस् । तिनीहरूका मुखबाट त शत्रुता प्रकट भइसकेको छ र जुन (छलकपट) तिनका छातीमा लुकेको छ, त्यो त झन् धेरै छ । हामीले तिमीलाई आफ्ना आयतहरू स्पष्ट गरिदिई सकेका छौं यदि तिमी बुझ्दछौ ।

هٰٓاَنْتُمْ اُولَاۗءِ تُحِبُّوْنَھُمْ وَلَا يُحِبُّوْنَكُمْ وَتُؤْمِنُوْنَ بِالْكِتٰبِ كُلِّهٖ ۚ وَاِذَا لَقُوْكُمْ قَالُوْٓا اٰمَنَّا ښ وَاِذَا خَلَوْا عَضُّوْا عَلَيْكُمُ الْاَنَامِلَ مِنَ الْغَيْظِ ۭ قُلْ مُوْتُوْا بِغَيْظِكُمْ ۭ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿١١٩﴾

११९) तिमीहरूसंग बुद्धि भए आफै हेरिहाल कि तिमी त तिनीहरूलाई चाहन्छौ तर तिनीहरू तिमीसँग मित्रता गर्दैनन् । तिमी सबै ग्रन्थहरूमा विश्वास गर्दछौ । (तिनीहरू मान्दैनन्) तिनीहरूले तिम्रा सामु ईमान

ल्याएको स्वीकार गर्दछन् र जब तिमीबाट अलग हुन्छन् त तिमीसँग क्रोधको कारणले आफ्नै औंला टोक्न थाल्दछन् । भनिदेऊ ! कि तिमीहरू क्रोधमै मरिहाल, अल्लाह तिम्रा हृदयका रहस्यहरूलाई राम्ररी बुझ्दछ ।

إِن تَمْسَسْكُمْ حَسَنَةٌ تَسُؤْهُمْ وَإِن تُصِبْكُمْ سَيِّئَةٌ يَفْرَحُوا بِهَا ۖ وَإِن تَصْبِرُوا وَتَتَّقُوا لَا يَضُرُّكُمْ كَيْدُهُمْ شَيْئًا ۗ إِنَّ اللَّهَ بِمَا يَعْمَلُونَ مُحِيطٌ ﴿١٢٠﴾

१२०) यदि तिमीलाई भलाई प्राप्त हुन्छ भने तिनलाई नराम्रो लाग्छद, यदि तिमीलाई दुःख हुन्छ भने तिनीहरू खुशी हुन्छन् । यदि तिमीले संतोषगरी अल्लाहबाट डर मान्छौ भने, तिनका षड्यन्त्रले तिमीलाई केही पनि नोक्सान पुऱ्याउन सक्ने छैन । अल्लाहले तिनीहरूले गर्ने कृयाकलापको घेराबन्दी गरी सकेको छ ।

وَإِذْ غَدَوْتَ مِنْ أَهْلِكَ تُبَوِّئُ الْمُؤْمِنِينَ مَقَاعِدَ لِلْقِتَالِ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿١٢١﴾

१२१) हे नबी, त्यस समयलाई पनि स्मरण गर जब बिहान-बिहानै तपाईले आफ्ना घरबाट शीघ्र प्रस्थान गरी ईमानवालाहरूलाई युद्ध क्षेत्रका मोर्चाहरूमा (जङ्गे ओहद्) सुव्यवस्थित तरिकाले खटाइराखेको थियो । र अल्लाह सबै कुरा सुन्ने र जान्नेवाला हो ।

إِذْ هَمَّت طَّائِفَتَانِ مِنكُمْ أَن تَفْشَلَا وَاللَّهُ وَلِيُّهُمَا ۗ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿١٢٢﴾

१२२) जुनबेला तिमी मध्येबाट दुई समूहले (बनू हारसा र बनू सल्मा) हिम्मत छोड्ने इच्छा गरेका थिए, अल्लाह तिनका मद्दतकर्ता हो ।

मोमिनहरूलाई अल्लाहकै माथि नै भरोसा गर्नुपर्छ ।

१२३) अल्लाहले बद्रको युद्धमा पनि ठीक त्यस बेला तिम्रो सहायता गरेको थियो, जब तिमी धेरै कमजोर अवस्थामा पुगिसकेका थियौ । तसर्थ अल्लाहसँग मात्र डर जसबाट तिमी आभार प्रकट गर्नसक ।

وَلَقَدْ نَصَرَكُمُ اللّٰهُ بِبَدْرٍ وَّاَنْتُمْ اَذِلَّةٌ ۚ فَاتَّقُوا اللّٰهَ
لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٢٣﴾

१२४) जब तपाईले मोमिनहरूलाई भरोसा दिइरहनु भएको थियो । के यो पर्याप्त छैन कि पालनकर्ताले तीन हजार दूतहरू (फरिश्ता) पठाई तपाईलाई मद्दत गर्‍यो ।

اِذْ تَقُوْلُ لِلْمُؤْمِنِيْنَ اَلَنْ يَّكْفِيَكُمْ اَنْ يُّمِدَّكُمْ
رَبُّكُمْ بِثَلٰثَةِ اٰلٰفٍ مِّنَ الْمَلٰٓئِكَةِ مُنْزَلِيْنَ ﴿١٢٤﴾

१२५) हो, यदि तिमी संतोष र धैर्य राख्दछौ र तिनीहरू यसैबेला तिमीमाथि आई लाग्छन् भने तिम्रो रबले पाँचहजार दूतहरू, जसमाथि चिन्हहरू हुनेछन्, तिम्रो सहायताको लागि पठाउने छ ।

بَلٰٓى ۙ اِنْ تَصْبِرُوْا وَتَتَّقُوْا وَيَاْتُوْكُمْ مِّنْ فَوْرِهِمْ
هٰذَا يُمْدِدْكُمْ رَبُّكُمْ بِخَمْسَةِ اٰلٰفٍ مِّنَ الْمَلٰٓئِكَةِ
مُسَوِّمِيْنَ ﴿١٢٥﴾

१२६) र त्यो मद्दतलाई त अल्लाहले तिम्रो खुशी र सन्तुष्टिका लागि गर्‍यो अन्यथा सहायता त अल्लाहकै तर्फबाट हुन्छ, जो सर्वशक्तिमान र कौशल सम्पन्न छ ।

وَمَا جَعَلَهُ اللّٰهُ اِلَّا بُشْرٰى لَكُمْ وَلِتَطْمَئِنَّ قُلُوْبُكُمْ
بِهٖ ۗ وَمَا النَّصْرُ اِلَّا مِنْ عِنْدِ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ﴿١٢٦﴾

१२७) (यस कारणले त्यो मद्दत गर्‍यो कि) काफिरहरूको एउटा समूहलाई निर्मूल वा अपमानित गरिहालोस् जसले गर्दा ती सबै असफल भई फर्कि हालुन् ।

لِيَقْطَعَ طَرَفًا مِّنَ الَّذِيْنَ كَفَرُوْٓا اَوْ يَكْبِتَهُمْ
فَيَنْقَلِبُوْا خَآئِبِيْنَ ﴿١٢٧﴾

لَيْسَ لَكَ مِنَ الْأَمْرِ شَيْءٌ أَوْ يَتُوبَ عَلَيْهِمْ أَوْ يُعَذِّبَهُمْ فَإِنَّهُمْ ظَالِمُونَ ﴿١٢٨﴾

१२८) हे पैगम्बर ! यसमा तपाईको अख्तियारमा केही छैन । अल्लाहले चाहेमा तिनीहरूको प्रायश्चित स्वीकार गर्दछ अथवा तिनीलाई सजाय दिन्छ किनभने तिनीहरू अत्याचारी हुन् ।

وَلِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۚ يَغْفِرُ لِمَنْ يَشَاءُ وَيُعَذِّبُ مَنْ يَشَاءُ ۚ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ﴿١٢٩﴾

१२९) आकाशहरूमा र धरतीमा जे छ, सबै अल्लाहको हो । उसले आफ्नो इच्छा अनुसार जसलाई चाहन्छ क्षमा गरिदिन्छ र जसलाई चाहन्छ, दण्ड दिन्छ र अल्लाह क्षमा-दाता र दयावान छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَأْكُلُوا الرِّبَا أَضْعَافًا مُضَاعَفَةً ۖ وَاتَّقُوا اللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿١٣٠﴾

१३०) हे ईमानवालाहरू ! बढाई-चढाई व्याज नखाऊ, अल्लाहसँग डर ताकि मुक्ति प्राप्त गर्नसक ।

وَاتَّقُوا النَّارَ الَّتِي أُعِدَّتْ لِلْكَافِرِينَ ﴿١٣١﴾

१३१) र त्यस आगोबाट डर, जुन काफिरहरूको लागि तयार गरिएको छ ।

وَأَطِيعُوا اللَّهَ وَالرَّسُولَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٣٢﴾

१३२) अल्लाह र उसको रसूलको आज्ञा पालन गर ताकि तिमीमाथि कृपा गरियोस् ।

وَسَارِعُوا إِلَىٰ مَغْفِرَةٍ مِنْ رَبِّكُمْ وَجَنَّةٍ عَرْضُهَا السَّمَاوَاتُ وَالْأَرْضُ أُعِدَّتْ لِلْمُتَّقِينَ ﴿١٣٣﴾

१३३) र, आफ्नो रबको क्षमा र त्यस स्वर्ग तर्फ अगाडि बढ जसको चौडाई आकाश र पृथ्वी जतिको छ, र जुन अल्लाहसँग डर मान्नेहरूको निम्ति बनाइएको छ ।

الَّذِينَ يُنْفِقُونَ فِي السَّرَّاءِ وَالضَّرَّاءِ وَالْكَاظِمِينَ الْغَيْظَ وَالْعَافِينَ عَنِ النَّاسِ ۗ وَاللَّهُ يُحِبُّ الْمُحْسِنِينَ ﴿١٣٤﴾

१३४) जसले सुख र दु:खमा (अल्लाहको मार्गमा) खर्च गर्दछन् र क्रोधलाई नियन्त्रणमा राख्दछन् र मानिसहरूका

त्रुटिहरू क्षमा गरिदिन्छन्, अल्लाह ती सत्कर्म गर्नेहरूलाई प्रेम गर्दछ ।

وَالَّذِينَ إِذَا فَعَلُوا فَاحِشَةً أَوْ ظَلَمُوا أَنْفُسَهُمْ ذَكَرُوا اللَّهَ فَاسْتَغْفَرُوا لِذُنُوبِهِمْ وَمَنْ يَغْفِرُ الذُّنُوبَ إِلَّا اللَّهُ وَلَمْ يُصِرُّوا عَلَىٰ مَا فَعَلُوا وَهُمْ يَعْلَمُونَ ۝١٣٥

१३५) जब तिनीहरूले खुला रूपमा कुनै गल्ती वा गुनाह गर्दछन् त तत्कालै अल्लाहलाई स्मरण गर्दछन् र आफ्ना भूलहरूका लागि क्षमा-याचना गर्दछन् । तथ्य यो छ कि अल्लाह बाहेक कसले क्षमादान गर्न सक्छ ? तिनीहरू जानी जानी आफ्नो गलत कामहरूको लागि अडान लिदैनन् ।

أُولَٰئِكَ جَزَاؤُهُمْ مَغْفِرَةٌ مِنْ رَبِّهِمْ وَجَنَّاتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا وَنِعْمَ أَجْرُ الْعَامِلِينَ ۝١٣٦

१३६) यस्तै मानिसहरूका लागि पुरस्कार तिनको पालनकर्ताको तर्फबाट माफी र स्वर्ग छ, जसको मुनि नहरहरू बगरिहेका छन्, तिनीहरू त्यसमा सधैं बस्नेछन् । ती असल कर्म गर्नेहरूको पुरस्कार धेरै राम्रो छ ।

قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ سُنَنٌ فَسِيرُوا فِي الْأَرْضِ فَانْظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ۝١٣٧

१३७) तिमीहरू भन्दा अगाडि पनि यस्ता घटनाहरू घटीसकेका छन्, तसर्थ पृथ्वीमा भ्रमण गरी, हेर कि अल्लाहका आदेशलाई इन्कार गर्नेहरूको परिणाम के भयो ।

هَٰذَا بَيَانٌ لِلنَّاسِ وَهُدًى وَمَوْعِظَةٌ لِلْمُتَّقِينَ ۝١٣٨

१३८) सामान्य मानिसहरूको निम्ति यो (कुरआन) एउटा वक्तव्य हो र अल्लाहका सेवकहरूका लागि पथप्रदर्शन र नसीहत हो ।

وَلَا تَهِنُوا وَلَا تَحْزَنُوا وَأَنْتُمُ الْأَعْلَوْنَ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ۝١٣٩

१३९) हेर, तिमी न अल्छी गर न चिन्तित होऊ । यदि तिमी ईमानवाला हौ भने तिम्रै वर्चस्व कायम हुने छ ।

إِنْ يَمْسَسْكُمْ قَرْحٌ فَقَدْ مَسَّ الْقَوْمَ قَرْحٌ مِّثْلُهُ ۚ وَتِلْكَ الْأَيَّامُ نُدَاوِلُهَا بَيْنَ النَّاسِ وَلِيَعْلَمَ اللَّهُ الَّذِينَ آمَنُوا وَيَتَّخِذَ مِنكُمْ شُهَدَاءَ ۗ وَاللَّهُ لَا يُحِبُّ الظَّالِمِينَ ﴿١٤٠﴾

१४०) यदि तिमीलाई (पराजयको) चोट पुगेको छ भने विरोधीहरू पनि घाइते भइसकेका छन् । यी दिनहरूलाई मानिसहरू माझ हामीले परिवर्तन गरिराख्दछौ, (ओहद पराजयको) यो पनि उद्देश्य थियो कि अल्लाहले ईमान भएकाहरूलाई अलग गरिहालोस् र तिमीहरू मध्येबाट केहीलाई शहादत प्रदान गरोस् । अल्लाह अत्याचारीहरूलाई प्रेम गर्दैन ।

وَلِيُمَحِّصَ اللَّهُ الَّذِينَ آمَنُوا وَيَمْحَقَ الْكَافِرِينَ ﴿١٤١﴾

१४१) (र यो पनि कि) अल्लाहले ईमान भएकाहरूलाई बिल्कुल अलग गरेर काफिरहरूलाई निर्मूल पारिदेओस् ।

أَمْ حَسِبْتُمْ أَن تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَعْلَمِ اللَّهُ الَّذِينَ جَاهَدُوا مِنكُمْ وَيَعْلَمَ الصَّابِرِينَ ﴿١٤٢﴾

१४२) के तिमीले यो ठानी सकेका छौ कि (बिना परीक्षा) तिमीहरू स्वर्गमा प्रवेश पाउने छौ, यद्यपि अहिलेसम्म अल्लाहले यो स्पष्ट गरेको छैन कि तिमीहरूमध्येका जिहादी को हुन् र संतोष गर्नेहरू को हुन् ?

وَلَقَدْ كُنتُمْ تَمَنَّوْنَ الْمَوْتَ مِن قَبْلِ أَن تَلْقَوْهُ فَقَدْ رَأَيْتُمُوهُ وَأَنتُمْ تَنظُرُونَ ﴿١٤٣﴾

१४३) युद्ध हुनु भन्दा पहिला त तिमी शहादतको इच्छुक थियौ, अब त तिमीले त्यसलाई आफ्नै आँखाले देखिहाल्यौ ।

وَمَا مُحَمَّدٌ إِلَّا رَسُولٌ قَدْ خَلَتْ مِن قَبْلِهِ الرُّسُلُ ۚ أَفَإِن مَّاتَ أَوْ قُتِلَ انقَلَبْتُمْ عَلَىٰ أَعْقَابِكُمْ ۚ وَمَن يَنقَلِبْ عَلَىٰ عَقِبَيْهِ فَلَن يَضُرَّ اللَّهَ شَيْئًا ۗ وَسَيَجْزِي اللَّهُ الشَّاكِرِينَ ﴿١٤٤﴾

१४४) मोहम्मद (सल्ललाहु अलैहे वसल्लम) त मात्र अल्लाहका रसूल हुन् । उनीभन्दा पहिला पनि धेरै रसूलहरू गुज्री सकेका छन् । यदि उनको मृत्यु हुन्छ अथवा शहीद भइहाले

भने के तिमी इस्लामबाट तत्काल फर्किहाल्छौ ? र यदि जो कोही विचलित भइहाल्छ भने त्यसले अल्लाहको केही बिगार्न सक्तैन र अल्लाहले कृतज्ञहरूलाई छिट्टै राम्रो प्रतिफल प्रदान गर्नेछ ।

وَمَا كَانَ لِنَفْسٍ أَنْ تَمُوتَ إِلَّا بِإِذْنِ اللَّهِ كِتَٰبًا مُّؤَجَّلًا ۗ وَمَن يُرِدْ ثَوَابَ الدُّنْيَا نُؤْتِهِ مِنْهَا وَمَن يُرِدْ ثَوَابَ الْآخِرَةِ نُؤْتِهِ مِنْهَا ۚ وَسَنَجْزِي الشَّٰكِرِينَ ﴿١٤٥﴾

१४५) अल्लाहको अनुमति बेगैर कुनै जीवित मर्दैन, सबैको समयावधि निर्धारित गरिएको छ र जुन व्यक्ति संसारमा फल चाहन्छ, त्यसलाई हामीले दुनिया मै केही फल दिन्छौ र जो आखिरतमा फल प्राप्तिको इच्छुक छ, उसलाई हामीले त्यो पनि दिनेछौं र कृतज्ञहरूलाई हामीले राम्रो प्रतिफल प्रदान गर्ने छौं ।

وَكَأَيِّن مِّن نَّبِيٍّ قَٰتَلَ مَعَهُۥ رِبِّيُّونَ كَثِيرٌ فَمَا وَهَنُوا لِمَا أَصَابَهُمْ فِي سَبِيلِ اللَّهِ وَمَا ضَعُفُوا وَمَا اسْتَكَانُوا ۗ وَاللَّهُ يُحِبُّ الصَّٰبِرِينَ ﴿١٤٦﴾

१४६) धेरै नबीहरूका सहयात्री भएर अल्लाहका धेरै उपासकहरू अल्लाहका शत्रुहरूसित युद्ध गरेका छन् । तिनीहरूलाई पनि अल्लाहको मार्गमा दु:ख पऱ्यो, तर त्यसबाट तिनीहरूले कहिल्यै न त साहस गुमाए, न अल्छी भए र न त शत्रुबाट हार माने । अल्लाह सहनशीलहरूलाई नै चाहन्छ ।

وَمَا كَانَ قَوْلَهُمْ إِلَّا أَن قَالُوا رَبَّنَا اغْفِرْ لَنَا ذُنُوبَنَا وَإِسْرَافَنَا فِي أَمْرِنَا وَثَبِّتْ أَقْدَامَنَا وَانصُرْنَا عَلَى الْقَوْمِ الْكَٰفِرِينَ ﴿١٤٧﴾

१४७) (यस्तो अवस्थामा पनी) तिनीहरूले यो भन्दै गरे कि हे पालनहार : हाम्रा पापहरू माफ गरिदेऊ र हाम्रा काममा भएका भूलहरू क्षमा

गरिदेऊ र हामीलाई दृढ र अटल राख र काफिरहरू माथि विजय प्राप्त गर्न हाम्रो सहायता गर ।

१४८) अल्लाहले तिनलाई संसारमा पनि पुरस्कृत गऱ्यो र आखिरतमा पनि धेरै राम्रो प्रतिफलको खूबी प्रदान गऱ्यो । र अल्लाह सदाचारीहरूलाई मायाँ गर्दछ ।

فَاٰتٰىهُمُ اللّٰهُ ثَوَابَ الدُّنْيَا وَحُسْنَ ثَوَابِ الْاٰخِرَةِ ؕ وَاللّٰهُ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٤٨﴾

१४९) मोमिनहरू हो ! यदि तिमी काफिरहरूको भनाई मान्छौ भने, तिनीहरूले तिमीलाई तुरुन्तै विचलित गराई दिनेछन्, अनि तिमीलाई ठूलै हानि हुनेछ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِنْ تُطِيْعُوا الَّذِيْنَ كَفَرُوْا يَرُدُّوْكُمْ عَلٰۤى اَعْقَابِكُمْ فَتَنْقَلِبُوْا خٰسِرِيْنَ ﴿١٤٩﴾

१५०) अपितु अल्लाह नै तिम्रो मालिक हो र उही नै सबभन्दा राम्रो मद्दतगार हो ।

بَلِ اللّٰهُ مَوْلٰىكُمْ ۚ وَهُوَ خَيْرُ النّٰصِرِيْنَ ﴿١٥٠﴾

१५१) हामीले छिट्टै काफिरहरूको हृदयमा तिम्रो भयको सृजना गरिदिनेछौं, किनभने तिनीहरूले अल्लाहसित अरुहरूको साझेदारी ठहराउँछन्, जसको कि अल्लाहले कुनै प्रमाण पठाएको छैन र तिनको आश्रय नर्क हुनेछ । र त्यो अत्याचारीहरूका लागि सबैभन्दा नराम्रो बासस्थान हो ।

سَنُلْقِيْ فِيْ قُلُوْبِ الَّذِيْنَ كَفَرُوا الرُّعْبَ بِمَاۤ اَشْرَكُوْا بِاللّٰهِ مَا لَمْ يُنَزِّلْ بِهٖ سُلْطٰنًا ۚ وَمَاْوٰىهُمُ النَّارُ ؕ وَبِئْسَ مَثْوَى الظّٰلِمِيْنَ ﴿١٥١﴾

१५२) अल्लाहले आफ्नो वचन पूरा गरेर देखाई हाल्यो, जब तिमीले उसको आदेशले काफिरहरूलाई मरिराखेका थियौ, यहाँसम्म कि जब तिमीले आफ्नो साहस गुमाउन लागेका

وَلَقَدْ صَدَقَكُمُ اللّٰهُ وَعْدَهٗۤ اِذْ تَحُسُّوْنَهُمْ بِاِذْنِهٖ ۚ حَتّٰۤى اِذَا فَشِلْتُمْ وَتَنَازَعْتُمْ فِى الْاَمْرِ وَعَصَيْتُمْ مِّنْۢ بَعْدِ مَاۤ اَرٰىكُمْ مَّا تُحِبُّوْنَ ؕ مِنْكُمْ مَّنْ يُّرِيْدُ الدُّنْيَا وَمِنْكُمْ مَّنْ يُّرِيْدُ الْاٰخِرَةَ ۚ ثُمَّ صَرَفَكُمْ عَنْهُمْ

لِيَبْتَلِيَكُمْ ۚ وَلَقَدْ عَفَا عَنكُمْ ۗ وَاللَّهُ ذُو
فَضْلٍ عَلَى الْمُؤْمِنِينَ ﴿١٥٢﴾

थियौ र काममा झगडा गर्न थाल्यौ र उसको आदेशको अवज्ञा गर्‍यौ, यस पश्चात पनि कि तिमीले चाहेको चीज उसले तिमीलाई देखाइदियो । तिमीहरू मध्ये केही त सांसारिक लाभ प्राप्तिको इच्छा गरिराखेका थिए र केही परलोकको आकांक्षा राख्दथे । फेरि अल्लाहले तिमीलाई तिनीहरूकोसँगबाट फर्काई हाल्यौ ताकि तिम्रो परीक्षा गरोस् र निःसंदेह उसले तिम्रा सम्पूर्ण त्रुटिहरूलाई क्षमा गरिदियो र अल्लाह मोमिनहरूमाथि धेरै दया गर्दछ ।

إِذْ تُصْعِدُونَ وَلَا تَلْوُونَ عَلَىٰ أَحَدٍ
وَالرَّسُولُ يَدْعُوكُمْ فِي أُخْرَاكُمْ فَأَثَابَكُمْ
غَمًّا بِغَمٍّ لِّكَيْلَا تَحْزَنُوا عَلَىٰ مَا فَاتَكُمْ
وَلَا مَا أَصَابَكُمْ ۗ وَاللَّهُ خَبِيرٌ بِمَا
تَعْمَلُونَ ﴿١٥٣﴾

१५३) जब तिमीहरू टाढा भाग्दै थियौ र कसैको वास्ता गरिराखेका थिएनौ र अल्लाहका रसूलले तिमीलाई तिम्रो पछाडिबाट आवाज दिई रहनु भएको थियो । तिमी माथि एक कष्ट पछि अर्को दुःख पुग्यो ताकि जुन कुरो तिम्रो हातबाट हराउँदै थियो त्यसबाट दुःखी नहोऊ र नपुगेको कष्टको लागि उदास नहोऊ । अल्लाह सबै क्रियाकलापको जानकारी राख्दछ ।

ثُمَّ أَنزَلَ عَلَيْكُم مِّن بَعْدِ الْغَمِّ أَمَنَةً نُّعَاسًا يَغْشَىٰ
طَائِفَةً مِّنكُمْ ۖ وَطَائِفَةٌ قَدْ أَهَمَّتْهُمْ أَنفُسُهُمْ
يَظُنُّونَ بِاللَّهِ غَيْرَ الْحَقِّ ظَنَّ الْجَاهِلِيَّةِ ۖ يَقُولُونَ
هَل لَّنَا مِنَ الْأَمْرِ مِن شَيْءٍ ۗ قُلْ إِنَّ الْأَمْرَ كُلَّهُ لِلَّهِ ۗ
يُخْفُونَ فِي أَنفُسِهِم مَّا لَا يُبْدُونَ لَكَ ۖ يَقُولُونَ لَوْ

१५४) अनि त्यस कष्टपछि अल्लाहले तिमीलाई सन्तुष्टि प्रदान गर्‍यो, जसबाट तिमीहरूमध्येको एउटा समूहलाई शान्तिको निद्रा आउन लाग्यो, जबकि अर्कोतर्फ एउटा

كَانَ لَنَا مِنَ الْاَمْرِ شَيْءٌ مَّا قُتِلْنَا هٰهُنَا ۗ قُلْ لَّوْ كُنْتُمْ فِيْ بُيُوْتِكُمْ لَبَرَزَ الَّذِيْنَ كُتِبَ عَلَيْهِمُ الْقَتْلُ اِلٰى مَضَاجِعِهِمْ ۚ وَلِيَبْتَلِيَ اللّٰهُ مَا فِيْ صُدُوْرِكُمْ وَلِيُمَحِّصَ مَا فِيْ قُلُوْبِكُمْ ۗ وَاللّٰهُ عَلِيْمٌ بِذَاتِ الصُّدُوْرِ ﴿١٥٤﴾

त्यो समूह पनि थियो, जसलाई आफ्नो प्राणको चिन्ता थियो उनीहरूले अल्लाहप्रति मूर्खतापूर्ण शंकाको कुरा गरिरहेका थिए र भन्दथे कि के हामीलाई पनि कुनै कुराको अधिकार छ र ? तपाई भनिदिनुस् कि सबै कुराहरू अल्लाहको अधिकार अन्तर्गत पर्दछन् । तिनीहरूले आफ्नो मनमा लुकाएर राखेका कुरा तपाई सम्मुख प्रकट गर्दैनन् । भन्दथे कि यदि हाम्रो अधिकार भित्र केही कुरा भएको भए हामी यहाँ किन मारिन्थ्यौं ?। तपाई भनिदिनुस् कि यदि मारिनु नै तिम्रो भाग्य भएको भए, तिमी आफ्नो घरहरूमा भए पनि, निश्चित रूपमा आफ्ना मृत्यु-स्थल तिरै निस्की जाने थियौ । कि अल्लाहले तिम्रो छाती भित्रको कुराको परीक्षा गर्नु र तिम्रो हृदयमा जे छ त्यसलाई पवित्र गर्नु थियो र अल्लाह हृदयहरूमा भएका भित्री कुराहरू राम्ररी जान्दछ ।

اِنَّ الَّذِيْنَ تَوَلَّوْا مِنْكُمْ يَوْمَ الْتَقَى الْجَمْعٰنِ ۙ اِنَّمَا اسْتَزَلَّهُمُ الشَّيْطٰنُ بِبَعْضِ مَا كَسَبُوْا ۚ وَلَقَدْ عَفَا اللّٰهُ عَنْهُمْ ۗ اِنَّ اللّٰهَ غَفُوْرٌ حَلِيْمٌ ﴿١٥٥﴾

१५५) तिमीहरूमध्ये जुन मानिसहरू भागिहाले, त्यसदिन जब दुई समूहहरूको बीच भिडन्त भएको थियो, । तिनीहरू आफ्ना केही क्रियाकलापका कारण शैतानको जालमा परिहाले, तर अल्लाहले

तिनका त्रुटिहरूलाई क्षमा गरिदियो निःसन्देह अल्लाह क्षमाकर्ता र सहनकर्ता छ ।

१५६) हे मोमिनहरू ! तिमी ती मानिसहरू जस्तो न हुनु जसले "कुफ्र" गरे र आफ्ना भाइहरूको बारेमा जो यात्रा गरिरहेको अथवा जिहादमा संलग्न हुन्छन् भन्न थाले कि यदि तिनीहरू हाम्रो साथमा भएको भए न त मर्दथे, न त मारिन्थे, यसको कारण यो थियो कि अल्लाहले तिनीहरूको हृदयमा त्यस्तो आकांक्षाको सृजना गरिदिन्छ । र जीवन र मृत्यु त अल्लाह नै दिन्छ र अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापलाई हेरिराखेको छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَكُونُواْ كَٱلَّذِينَ كَفَرُواْ
وَقَالُواْ لِإِخۡوَٰنِهِمۡ إِذَا ضَرَبُواْ فِي ٱلۡأَرۡضِ أَوۡ كَانُواْ
غُزࣰّى لَّوۡ كَانُواْ عِندَنَا مَا مَاتُواْ وَمَا قُتِلُواْ لِيَجۡعَلَ
ٱللَّهُ ذَٰلِكَ حَسۡرَةࣰ فِي قُلُوبِهِمۡۗ وَٱللَّهُ يُحۡيِۦ
وَيُمِيتُۗ وَٱللَّهُ بِمَا تَعۡمَلُونَ بَصِيرࣱ ١٥٦

१५७) र यदि तिमीहरू अल्लाहको मार्गमा मारिन्छौ अथवा आफ्नो मृत्यु मर्दछौ भने निःसंदेह यिनीहरूले संकलन गरिरहेको (धनसम्पत्ति) भन्दा अल्लाहको क्षमादान र दया धेरै राम्रो छ ।

وَلَئِن قُتِلۡتُمۡ فِي سَبِيلِ ٱللَّهِ أَوۡ مُتُّمۡ لَمَغۡفِرَةࣱ مِّنَ
ٱللَّهِ وَرَحۡمَةٌ خَيۡرࣱ مِّمَّا يَجۡمَعُونَ ١٥٧

१५८) निश्चित रूपले यदि तिमी मर्दछौ अथवा मारिन्छौ, त याद राख कि अल्लाहको सम्मुख अवश्य नै प्रस्तुत गरिने छौ ।

وَلَئِن مُّتُّمۡ أَوۡ قُتِلۡتُمۡ لَإِلَى ٱللَّهِ تُحۡشَرُونَ ١٥٨

१५९) (हे मोहम्मद स.अ. !) अल्लाहको कृपाले तपाईको मन यिनीहरू प्रति नरम छ र यदि तपाई कटु वचन

فَبِمَا رَحۡمَةࣲ مِّنَ ٱللَّهِ لِنتَ لَهُمۡۖ وَلَوۡ كُنتَ فَظًّا
غَلِيظَ ٱلۡقَلۡبِ لَٱنفَضُّواْ مِنۡ حَوۡلِكَۖ فَٱعۡفُ
عَنۡهُمۡ وَٱسۡتَغۡفِرۡ لَهُمۡ وَشَاوِرۡهُمۡ فِي ٱلۡأَمۡرِۖ فَإِذَا

र कठोर हृदयको भएको भए यिनीहरू तपाईबाट टाढा भागिहाल्दथे, तसर्थ तिनीहरूलाई क्षमा गरिदिनुस् र तिनीहरूको निम्ति क्षमाको लागि प्रार्थना गर्नु र आफ्ना कामहरूमा यिनीहरूसँग सरसल्लाह गर्ने गर्नु, र जब कुनै कामबारे दृढ निश्चय गर्दछौ भने अल्लाहमाथि पूर्ण भरोसा राख । निःसन्देह अल्लाह भरोसा गर्नेहरूलाई प्रेम गर्दछ ।

عَزَمْتَ فَتَوَكَّلْ عَلَى اللّٰهِ ۭ اِنَّ اللّٰهَ يُحِبُّ الْمُتَوَكِّلِيْنَ ﴿١٥٩﴾

१६०) यदि अल्लाह तिम्रो मद्दत गर्दछ भने कसैले तिमीलाई पराजित गर्न सक्दैन । र यदि अल्लाहले तिमीलाई छोडि दिन्छ भने, को छ उसपछि जसले तिम्रो सहायता गर्न सकोस् ?। तसर्थ मोमिनहरूलाई अल्लाहमाथि नै भरोसा गर्नुपर्दछ ।

اِنْ يَّنْصُرْكُمُ اللّٰهُ فَلَا غَالِبَ لَكُمْ ۚ وَاِنْ يَّخْذُلْكُمْ فَمَنْ ذَا الَّذِيْ يَنْصُرُكُمْ مِّنْۢ بَعْدِهٖ ۭ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١٦٠﴾

१६१) यो असम्भव छ कि रसूलले बेइमानी गरुन् । र प्रत्येक बेइमानी गर्नेले कियामतको दिन बेइमानी गरिएको कुरा समेत लिएर प्रस्तुत हुनुपर्ने छ, त्यसपछि प्रत्येक मानिसलाई उसले गरेको कर्तव्यको पूरापूर प्रतिफल दिइने छ, र तिनीहरू उपर अन्याय गरिने छैन ।

وَمَا كَانَ لِنَبِيٍّ اَنْ يَّغُلَّ ۭ وَمَنْ يَّغْلُلْ يَاْتِ بِمَا غَلَّ يَوْمَ الْقِيٰمَةِ ۚ ثُمَّ تُوَفّٰى كُلُّ نَفْسٍ مَّا كَسَبَتْ وَھُمْ لَا يُظْلَمُوْنَ ﴿١٦١﴾

१६२) के त्यो मानिस जसले अल्लाहको सदिच्छा प्राप्तिको लागि प्रयत्नशील

اَفَمَنِ اتَّبَعَ رِضْوَانَ اللّٰهِ كَمَنْۢ بَاۗءَ بِسَخَطٍ مِّنَ اللّٰهِ وَمَاْوٰىهُ جَهَنَّمُ ۭ وَبِئْسَ الْمَصِيْرُ ﴿١٦٢﴾

छ, त्यस मानिस जस्तो हुनसक्छ जसले अल्लाहको क्रोध लिएर फर्कन्छ ? र जसको बासस्थान जहन्नम छ जो अत्यन्तै नराम्रो ठाउँ हो ।

هُمْ دَرَجٰتٌ عِنْدَ اللّٰهِ ۗ وَاللّٰهُ بَصِيْرٌۢ بِمَا يَعْمَلُوْنَ ﴿١٦٣﴾

१६३) अल्लाह कहाँ तिनीहरूको भिन्न-भिन्न श्रेणीहरू छन् र अल्लाहले तिनीहरूका सम्पूर्ण क्रियाकलापलाई देखिराखेको छ ।

لَقَدْ مَنَّ اللّٰهُ عَلَى الْمُؤْمِنِيْنَ اِذْ بَعَثَ فِيْهِمْ رَسُوْلًا مِّنْ اَنْفُسِهِمْ يَتْلُوْا عَلَيْهِمْ اٰيٰتِهٖ وَيُزَكِّيْهِمْ وَيُعَلِّمُهُمُ الْكِتٰبَ وَالْحِكْمَةَ ۚ وَاِنْ كَانُوْا مِنْ قَبْلُ لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿١٦٤﴾

१६४) नि:संदेह अल्लाहको मोमिनहरूमाथि ठूलो अनुकम्पा छ कि उसले तिनीहरूको माझमा तिनीहरू मध्येबाटै एउटा रसूल पठायो जसले कि अल्लाहका आयतहरू पढेर उनीहरूलाई सुनाउँदछ र तिनलाई पवित्र गर्दछ र उनलाई किताब र बुद्धिमता सिकाउँदछ, यिनीहरू यसभन्दा पहिला खुला रूपमा पथविचलित थिए ।

اَوَلَمَّاۤ اَصَابَتْكُمْ مُّصِيْبَةٌ قَدْ اَصَبْتُمْ مِّثْلَيْهَا ۙ قُلْتُمْ اَنّٰى هٰذَا ۗ قُلْ هُوَ مِنْ عِنْدِ اَنْفُسِكُمْ ۗ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٦٥﴾

१६५) (यस्तो किन) कि जब तिमीलाई एउटा कष्ट दिइयो, जबकि यसको दुई-गुणा कष्ट तिम्रो हातबाट तिनीहरूमाथि परिसकेको थियो, त तिमीहरू भन्नथाल्यौ कि यस्तो संकट कहाँबाट आइपऱ्यो ?। तपाई भनिदिनुस् कि यो तिमीहरूकै तर्फबाट आइपुगेको हो । नि:सन्देह अल्लाह सम्पूर्ण कुराहरूमाथि सामर्थ्य राख्दछ ।

وَمَآ اَصَابَكُمْ يَوْمَ الْتَقَى الْجَمْعٰنِ فَبِاِذْنِ اللّٰهِ وَلِيَعْلَمَ الْمُؤْمِنِيْنَ ﴿١٦٦﴾

१६६) तिमीलाई जे जति त्यो दिन पुगे, जुनदिन दुई समूहमा भिडन्त भयो, त्यो जम्मै अल्लाहकै आदेशले भएको थियो र यसकारण कि अल्लाहले मोमिनहरूलाई राम्ररी जान्न सकोस् ।

وَلِيَعْلَمَ الَّذِيْنَ نَافَقُوْا ۚ وَقِيْلَ لَهُمْ تَعَالَوْا قَاتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ اَوِ ادْفَعُوْا ۗ قَالُوْا لَوْ نَعْلَمُ قِتَالًا لَّا تَّبَعْنٰكُمْ ۗ هُمْ لِلْكُفْرِ يَوْمَئِذٍ اَقْرَبُ مِنْهُمْ لِلْاِيْمَانِ ۚ يَقُوْلُوْنَ بِاَفْوَاهِهِمْ مَّا لَيْسَ فِيْ قُلُوْبِهِمْ ۗ وَاللّٰهُ اَعْلَمُ بِمَا يَكْتُمُوْنَ ﴿١٦٧﴾

१६७) साथै मुनाफिकहरूलाई छुट्याउनका निम्ति पनि जोसंग भनियो कि आऊ अल्लाहको मार्गमा युद्ध गर अथवा काफिरहरूको आक्रमणलाई रोक । त भन्न थाले कि यदि हामीलाई युद्धबारे थाहा भएको भए, हामी अवश्य नै तिम्रो साथ दिने थिएँ । त्यसदिन यिनीहरू ईमानको दाँजोमा कुफ्रको नजिक थिए । आफ्नो मुखले तिनीहरूले ती कुराहरू भन्दछन् जुन तिनका हृदयमा छैनन् । र यिनले जे-जति कुरा लुकाउँछन्, अल्लाहलाई त्यसबारे सबै राम्ररी थाहा छ ।

اَلَّذِيْنَ قَالُوْا لِاِخْوَانِهِمْ وَقَعَدُوْا لَوْ اَطَاعُوْنَا مَا قُتِلُوْا ۗ قُلْ فَادْرَءُوْا عَنْ اَنْفُسِكُمُ الْمَوْتَ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٦٨﴾

१६८) यी ती मानिस हुन जो आफू पनि बसिराखेका थिए, र आफ्ना दाजुभाइहरूको बारेमा भने कि यदि हाम्रो आग्रह तिनीहरूले मानेको भए मारिने थिएनन् । भनिदिनुस् ! कि यदि तिमी साँचो हौ भने आफूलाई मृत्युबाट बचाऊ ।

وَلَا تَحْسَبَنَّ الَّذِيْنَ قُتِلُوْا فِيْ سَبِيْلِ اللّٰهِ اَمْوَاتًا ۗ بَلْ اَحْيَآءٌ عِنْدَ رَبِّهِمْ يُرْزَقُوْنَ ﴿١٦٩﴾

१६९) जुन मानिसहरूले अल्लाहको बाटोमा शहादत पाए, तिनलाई कदापि मुर्दा न ठान्नु । बरु जीवितै छन् र

तिनले आफ्ना रबबाट जीविका प्राप्त गरीराखेका छन् ।

فَرِحِيْنَ بِمَآ اٰتٰىهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۙ وَيَسْتَبْشِرُوْنَ بِالَّذِيْنَ لَمْ يَلْحَقُوْا بِهِمْ مِّنْ خَلْفِهِمْ ۙ اَلَّا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿١٧٠﴾

१७०) अल्लाहले तिनलाई आफ्नो कृपाले जे जति प्रदान गरेको छ, त्यसमा तिनीहरू अति खुशी छन् र खुशीयाली मनाई रहेका छन् उनीहरूका लागि जो अहिलेसम्म तिनीहरूमा सम्मिलित हुन सकेनन् र पछाडि छन्, यस कारण हर्षित छन् कि तिनलाई पनि न त कुनै भय-त्रास हुन्छ र न त तिनी दुःखी हुनेछन् ।

يَسْتَبْشِرُوْنَ بِنِعْمَةٍ مِّنَ اللّٰهِ وَفَضْلٍ ۙ وَّاَنَّ اللّٰهَ لَا يُضِيْعُ اَجْرَ الْمُؤْمِنِيْنَ ﴿١٧١﴾

१७१) र अल्लाहबाट प्रदान गरिएको पुरस्कारबाट तिनीहरू खुशी भइराखेका छन् र यस कुराबाट पनि कि अल्लाह मोमिनहरूको पारिश्रम कहिल्यै खेर फाल्दैन ।

اَلَّذِيْنَ اسْتَجَابُوْا لِلّٰهِ وَالرَّسُوْلِ مِنْۢ بَعْدِ مَآ اَصَابَهُمُ الْقَرْحُ ۛ لِلَّذِيْنَ اَحْسَنُوْا مِنْهُمْ وَاتَّقَوْا اَجْرٌ عَظِيْمٌ ﴿١٧٢﴾

१७२) जसले घाइते भएको बावजूद पनि अल्लाह र रसूलको आदेश स्वीकार गरे, यिनिहरू मध्ये जसले पुण्यको काम गरे र सदाचार गरे उनीहरूका लागि निकै ठूलो पुरस्कार छ ।

اَلَّذِيْنَ قَالَ لَهُمُ النَّاسُ اِنَّ النَّاسَ قَدْ جَمَعُوْا لَكُمْ فَاخْشَوْهُمْ فَزَادَهُمْ اِيْمَانًا ۖ وَّقَالُوْا حَسْبُنَا اللّٰهُ وَنِعْمَ الْوَكِيْلُ ﴿١٧٣﴾

१७३) (जब) तिनीहरूसित मानिसहरू आएर भने कि काफिरहरूले तिमीहरू भन्दा ठूलो सेना एकत्रित गरिसकेका छन्, तसर्थ उनीहरूसित डर मान त यो कुराले तिनको ईमानमा झन् बृद्धि गरिहाल्यो र भन्न थाले कि हामीलाई अल्लाह नै

प्रयाप्त छ र ऊ सर्वोत्तम योजनाकार छ ।

१७४) (परिणाम यो भयो कि) अल्लाहको उपहार र कृपाका साथ फर्के, तिनीलाई कुनै हानि पुगेन र तिनीहरू अल्लाहको प्रसन्नताको निम्ति नतमस्तक रहे र अल्लाह अपार दानशील छ ।

فَانْقَلَبُوا بِنِعْمَةٍ مِّنَ اللَّهِ وَفَضْلٍ لَّمْ يَمْسَسْهُمْ
سُوٓءٌ وَاتَّبَعُوا رِضْوَانَ اللَّهِ ۗ وَاللَّهُ ذُو فَضْلٍ عَظِيمٍ ﴿١٧٤﴾

१७५) यो समाचार दिने त शैतान नै हो; जसले कि आफ्ना मतियारहरूबाट भय सृजना गराउँदछ । तिमीहरू उसबाट नडर । तिमी यदि साँच्चै मोमिन हौ भने मसित नै डर्ने गर ।

إِنَّمَا ذَٰلِكُمُ الشَّيْطَانُ يُخَوِّفُ أَوْلِيَاءَهُ فَلَا
تَخَافُوهُمْ وَخَافُونِ إِن كُنتُم مُّؤْمِنِينَ ﴿١٧٥﴾

१७६) र जुन मानिसहरू कुफ्रतिर तीव्र गतिले बढिराखेका छन्, तिनले तिमीलाई भयभीत नगरुन्, निश्चितरूपले स्वीकार गर कि यिनले अल्लाहको केही हानि नोक्सानी गर्न सक्दैनन् । अल्लाह चाहन्छ कि आखिरतका दिनमा तिनलाई अंश नदेओस् र तिनका निम्ति ठूलो सजाय तयार छ ।

وَلَا يَحْزُنكَ الَّذِينَ يُسَارِعُونَ فِي الْكُفْرِ ۚ إِنَّهُمْ لَن
يَضُرُّوا اللَّهَ شَيْئًا ۗ يُرِيدُ اللَّهُ أَلَّا يَجْعَلَ لَهُمْ حَظًّا فِي
الْآخِرَةِ ۖ وَلَهُمْ عَذَابٌ عَظِيمٌ ﴿١٧٦﴾

१७७) ईमानको बदलामा कुफ्र किन्नेहरूले कदापि अल्लाहको केही बिगार्न सक्दैनन् र तिनकै लागि कष्टदायक सजाय हुनेछ ।

إِنَّ الَّذِينَ اشْتَرَوُا الْكُفْرَ بِالْإِيمَانِ لَن يَضُرُّوا اللَّهَ
شَيْئًا ۚ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٧٧﴾

१७८) काफिरहरूले हामीले तिनलाई दिएको छूटलाई आफ्नो पक्षमा राम्रो नठानुन् । बरु हामीले तिनलाई यो

وَلَا يَحْسَبَنَّ الَّذِينَ كَفَرُوا أَنَّمَا نُمْلِي لَهُمْ خَيْرٌ
لِّأَنفُسِهِمْ ۚ إِنَّمَا نُمْلِي لَهُمْ لِيَزْدَادُوا إِثْمًا ۚ وَلَهُمْ
عَذَابٌ مُّهِينٌ ﴿١٧٨﴾

छूट यसकारणले दिइराखेका छौं कि तिनीहरू बढी पाप गरिहालुन् । अन्ततः तिनलाई अपमानजनक सजाय हुनेछ ।

مَا كَانَ اللّٰهُ لِيَذَرَ الْمُؤْمِنِينَ عَلٰى مَآ اَنْتُمْ عَلَيْهِ حَتّٰى يَمِيزَ الْخَبِيثَ مِنَ الطَّيِّبِ ۗ وَمَا كَانَ اللّٰهُ لِيُطْلِعَكُمْ عَلَى الْغَيْبِ وَلٰكِنَّ اللّٰهَ يَجْتَبِى مِنْ رُّسُلِهٖ مَنْ يَّشَآءُ ۖ فَاٰمِنُوا بِاللّٰهِ وَرُسُلِهٖ ۚ وَاِنْ تُؤْمِنُوا وَتَتَّقُوا فَلَكُمْ اَجْرٌ عَظِيمٌ ﴿١٧٩﴾

१७९) जबसम्म अल्लाहले अपवित्रलाई पवित्रबाट अलग गर्दैन, मोमिनहरूलाई यस अवस्थामा जसमा कि तिमी छौ, कहिल्यै रहन दिने छैन । अल्लाहले तिमीलाई अदृश्य कुराबाट पनि अवगत गराउँदैन । (तर) हो, अल्लाहले आफ्ना रसूलहरू मध्ये जसलाई चाहन्छ रोज्दछ । तसर्थ तिमीले अल्लाह र उसका रसूलहरू माथि आस्था राख, यदि आस्था राख्दछौ र आत्मसंयमी हुन्छौ भने त्यसको ठूलो प्रतिफल प्राप्त गर्ने छौ ।

وَلَا يَحْسَبَنَّ الَّذِينَ يَبْخَلُونَ بِمَآ اٰتٰهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ هُوَ خَيْرًا لَّهُمْ ۗ بَلْ هُوَ شَرٌّ لَّهُمْ ۗ سَيُطَوَّقُونَ مَا بَخِلُوا بِهٖ يَوْمَ الْقِيٰمَةِ ۗ وَلِلّٰهِ مِيرَاثُ السَّمٰوٰتِ وَالْاَرْضِ ۗ وَاللّٰهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿١٨٠﴾

१८०) जुन मानिसहरूलाई जे जति धन सम्पत्ति अल्लाहले आफ्नो कृपाले प्रदान गरेको छ, तिनले त्यसमा कञ्जूस्यायीलाई आफ्नो हकमा राम्रो नठानुन् बरु (त्यो) तिनको निम्ति अहितकर छ । तिनीहरूले जुन धनमा कञ्जूसी गर्दछन् कियामतको दिन त्यसको तौक (पांग्रा) पहिराइने छन् । आकाशहरू र पृथ्वीको वेरासतको वास्तविक मालिक अल्लाह नै हो । र जुन क्रियाकलाप तिमीले गर्दछौ, अल्लाहलाई राम्री थाहा छ ।

१८१) निश्चय नै अल्लाहले तिनको भनाई पनि सुनिहाल्यो जसले भन्दछन् कि अल्लाह गरीब छ र हामी धनी छौं । उनको यस भनाईलाई हामीले लेखिलिने छौं र उनीहरूले पैगम्बरहरूलाई बिना दोष मारिराखेको कुरा पनि, र हामीले भन्ने छौ कि बलिरहेको आगोको सजाय भोगीराख ।

لَقَدْ سَمِعَ اللّٰهُ قَوْلَ الَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ فَقِيْرٌ وَّنَحْنُ اَغْنِيَآءُ ۘ سَنَكْتُبُ مَا قَالُوْا وَقَتْلَهُمُ الْاَنْۢبِيَآءَ بِغَيْرِ حَقٍّ ۙ وَّنَقُوْلُ ذُوْقُوْا عَذَابَ الْحَرِيْقِ ﴿١٨١﴾

१८२) यो तिमीले गरेको कर्महरूको प्रतिफल हो, र अल्लाह आफ्ना भक्तहरूमाथि कहिल्यै अत्याचार गर्दैन ।

ذٰلِكَ بِمَا قَدَّمَتْ اَيْدِيْكُمْ وَاَنَّ اللّٰهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيْدِ ۚ ﴿١٨٢﴾

१८३) यी त्यस्ता मानिस हुन् जो भन्दछन् कि अल्लाहले आदेश गरे अनुसार जबसम्म कुनै पैगम्बर हामी छेउ यस्तो कुर्बानी लिएर आउँदैन जसलाई आगोले खाइदेओस् । तबसम्म हामीले विश्वास गर्दैनौ । भनिदिनुस् कि यदि तिमी साँचो हौ भने मभन्दा अघि कैयौं पैगम्बरहरू तिम्रा छेउ खुल्ला रूपमा अनेक चमत्कारहरूका साथ यो पनि ल्याए जुन तिमीहरूले भनिराखेका छौ । फेरि उनीहरूलाई तिमीहरूले किन मार्‍यौ ?

اَلَّذِيْنَ قَالُوْٓا اِنَّ اللّٰهَ عَهِدَ اِلَيْنَآ اَلَّا نُؤْمِنَ لِرَسُوْلٍ حَتّٰى يَاْتِيَنَا بِقُرْبَانٍ تَاْكُلُهُ النَّارُ ۗ قُلْ قَدْ جَآءَكُمْ رُسُلٌ مِّنْ قَبْلِيْ بِالْبَيِّنٰتِ وَبِالَّذِيْ قُلْتُمْ فَلِمَ قَتَلْتُمُوْهُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٨٣﴾

१८४) फेरि पनि यदि यिनीहरूले तपाईलाई साँचो मान्दैनन् भने यस्तै तपाई भन्दा अगाडि धेरै

فَاِنْ كَذَّبُوْكَ فَقَدْ كُذِّبَ رُسُلٌ مِّنْ قَبْلِكَ جَآءُوْ بِالْبَيِّنٰتِ وَالزُّبُرِ وَالْكِتٰبِ الْمُنِيْرِ ﴿١٨٤﴾

पैगम्बरहरू झुटलाइएकोछन् जुन् खुला निशानी, तर्क र उज्यालो किताबहरू लिई आइसकेका छन् ।

१८५) प्रत्येक ज्यानले मृत्युको स्वाद चाख्नु पर्ने छ र तिमीलाई कियामतको दिन तिम्रा क्रियाकलापहरूको पूरापूर प्रतिफल प्रदान गरिने छ, तसर्थ जुन मानिसलाई नर्कको आगोबाट टाढा राखिनेछ र स्वर्गमा प्रवेश गराइनेछ, निश्चय नै उही सफल हुनेछ र संसारिक जीवन त भ्रमको सामान मात्र हो ।

كُلُّ نَفْسٍ ذَآئِقَةُ الْمَوْتِ ۗ وَإِنَّمَا تُوَفَّوْنَ أُجُورَكُمْ يَوْمَ الْقِيَامَةِ ۖ فَمَنْ زُحْزِحَ عَنِ النَّارِ وَأُدْخِلَ الْجَنَّةَ فَقَدْ فَازَ ۗ وَمَا الْحَيَاةُ الدُّنْيَا إِلَّا مَتَاعُ الْغُرُورِ ﴿١٨٥﴾

१८६) तिम्रा ज्यान र सम्पदाबाट तिम्रो परीक्षा गरिनेछ र तिमीले अहले किताब र ती मानिसहरूबाट जुन मुश्रिक छन्, कष्टदायक कुराहरू सुन्नु पर्नेछ । तसर्थ यदि तिमीले धैर्य र आत्मसंयम अपनाई राख्दछौ भने निःसंदेह यी ठूला साहसका काम हुन् ।

لَتُبْلَوُنَّ فِي أَمْوَالِكُمْ وَأَنْفُسِكُمْ وَلَتَسْمَعُنَّ مِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ مِنْ قَبْلِكُمْ وَمِنَ الَّذِينَ أَشْرَكُوا أَذًى كَثِيرًا ۚ وَإِنْ تَصْبِرُوا وَتَتَّقُوا فَإِنَّ ذَٰلِكَ مِنْ عَزْمِ الْأُمُورِ ﴿١٨٦﴾

१८७) र जब अल्लाहले किताबवालासित वचन लियो, कि सबैका लागि यसको वर्णन गर्ने छौ र त्यसको कुनै कुरा लुकाउँदैनौ, (तर) त्यसपछि तिनीहरूले त्यस वचनलाई अर्कोतिर फाली बेवास्ता गरिहाले र त्यसलाई थोरै मूल्यमा बेची दिए । यिनीहरूले गरेको यो व्यापार अत्यन्त नराम्रो छ ।

وَإِذْ أَخَذَ اللَّهُ مِيثَاقَ الَّذِينَ أُوتُوا الْكِتَابَ لَتُبَيِّنُنَّهُ لِلنَّاسِ وَلَا تَكْتُمُونَهُ فَنَبَذُوهُ وَرَاءَ ظُهُورِهِمْ وَاشْتَرَوْا بِهِ ثَمَنًا قَلِيلًا ۖ فَبِئْسَ مَا يَشْتَرُونَ ﴿١٨٧﴾

لَا تَحْسَبَنَّ الَّذِيْنَ يَفْرَحُوْنَ بِمَآ اَتَوْا وَّيُحِبُّوْنَ اَنْ يُّحْمَدُوْا بِمَا لَمْ يَفْعَلُوْا فَلَا تَحْسَبَنَّهُمْ بِمَفَازَةٍ مِّنَ الْعَذَابِ ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿١٨٨﴾

१८८) जुन मानिसहरू आफ्ना कर्महरूबाट खुशी हुन्छन् र आफूले नगरेको कामको प्रशंसा पनि चाहन्छन् त्यस्ताको सम्बन्धमा यो न सोच्नु कि तिनीहरू सजायबाट मुक्त हुन सक्दछन्, तिनीहरूलाई कष्टदायक सजाय हुनेछ ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۗ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٨٩﴾

१८९) आकाशहरू र पृथ्वीको राज्य अल्लाह कै लागि हो र अल्लाह प्रत्येक कुरो माथि सर्वशक्ति सम्पन्न छ ।

اِنَّ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ لَاٰيٰتٍ لِّاُولِي الْاَلْبَابِ ﴿١٩٠﴾

१९०) निःसन्देह आकाशमण्डल र पृथ्वीको सृष्टि र रात र दिनको चक्रमा बुद्धिमान मानिसहरूका लागि निशानीहरू छन् ।

الَّذِيْنَ يَذْكُرُوْنَ اللّٰهَ قِيٰمًا وَّقُعُوْدًا وَّعَلٰى جُنُوْبِهِمْ وَيَتَفَكَّرُوْنَ فِيْ خَلْقِ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ رَبَّنَا مَا خَلَقْتَ هٰذَا بَاطِلًا ۚ سُبْحٰنَكَ فَقِنَا عَذَابَ النَّارِ ﴿١٩١﴾

१९१) जुन मानिसहरूले उठदा, बस्दा र पल्टिरहँदा अल्लाहको स्मरण गर्दछन् र आकाशमण्डल र पृथ्वीको सृष्टिमाथि चिन्तन गर्दछन् र भन्दछन् कि हे हाम्रो पालनकर्ता ! तिमीले यी सबै सृष्टि निरुद्देश्य गरेको होइन । तिमी पवित्र छौ । हामीलाई नर्कको आगोबाट बचाऊ ।

رَبَّنَآ اِنَّكَ مَنْ تُدْخِلِ النَّارَ فَقَدْ اَخْزَيْتَهٗ ۗ وَمَا لِلظّٰلِمِيْنَ مِنْ اَنْصَارٍ ﴿١٩٢﴾

१९२) हे हाम्रो पालनकर्ता ! जसलाई तिमीले नर्कमा हाल्यौ, त्यसलाई तिरस्कृत गर्‍यौ र यस्ता अत्याचारीहरूको सहायता गर्ने कोही हुँदैन ।

رَبَّنَآ إِنَّنَا سَمِعْنَا مُنَادِيًا يُنَادِي لِلْإِيمَانِ أَنْ ءَامِنُوا۟ بِرَبِّكُمْ فَـَٔامَنَّا ۚ رَبَّنَا فَٱغْفِرْ لَنَا ذُنُوبَنَا وَكَفِّرْ عَنَّا سَيِّـَٔاتِنَا وَتَوَفَّنَا مَعَ ٱلْأَبْرَارِ ﴿١٩٣﴾

१९३) हे हाम्रो पालनकर्ता ! हामीले एउटा आव्हान गर्नेको आवाज सुन्यौं, जसले ईमानतिर आमन्त्रित गरिराखेको छ कि मानिसहरू हो आफ्नो पालनकर्तामाथि ईमान ल्याउनु । अनि हामीले ईमान ल्यायौं । हे रब! अब त हाम्रा सम्पूर्ण पापहरू क्षमा गर र हाम्रा दुर्गुणहरू हामीबाट टाढा गरिदेऊ र हाम्रा मृत्यु असल मानिसहरूको साथ गर ।

رَبَّنَا وَءَاتِنَا مَا وَعَدتَّنَا عَلَىٰ رُسُلِكَ وَلَا تُخْزِنَا يَوْمَ ٱلْقِيَـٰمَةِ ۗ إِنَّكَ لَا تُخْلِفُ ٱلْمِيعَادَ ﴿١٩٤﴾

१९४) हे हाम्रा पालनकर्ता ! तिमीले हामीलाई आफ्ना रसूलहरू मार्फत जुन वचन दिएका छौ, ती कुरा प्रदान गर र कियामतको दिन हामीलाई तिरस्कृत नगर्नु । यसमा कुनै सन्देह छैन कि तिमीले वचन विपरित गर्दैनौ ।

فَٱسْتَجَابَ لَهُمْ رَبُّهُمْ أَنِّى لَآ أُضِيعُ عَمَلَ عَـٰمِلٍ مِّنكُم مِّن ذَكَرٍ أَوْ أُنثَىٰ ۖ بَعْضُكُم مِّنۢ بَعْضٍ ۖ فَٱلَّذِينَ هَاجَرُوا۟ وَأُخْرِجُوا۟ مِن دِيَـٰرِهِمْ وَأُوذُوا۟ فِى سَبِيلِى وَقَـٰتَلُوا۟ وَقُتِلُوا۟ لَأُكَفِّرَنَّ عَنْهُمْ سَيِّـَٔاتِهِمْ وَلَأُدْخِلَنَّهُمْ جَنَّـٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَـٰرُ ثَوَابًا مِّنْ عِندِ ٱللَّهِ ۗ وَٱللَّهُ عِندَهُۥ حُسْنُ ٱلثَّوَابِ ﴿١٩٥﴾

१९५) तसर्थ तिनका रबले तिनको प्रार्थना स्वीकार गरिहाल्यो । कि तिमीमध्ये कर्तव्य गर्नेहरूको कामको चाहे त्यो नर होस् वा नारी, खेर फालिंदैन । धर्म र पुण्य कार्यमा तिमीहरू आपसमा एक अर्का जस्तै हौ, अतः जुन मानिसहरू मेरो निम्ति आफ्ना घरहरू परित्याग गरी बसाई सरे वा आफ्ना घरहरूबाट निष्कासित भए र उत्पीडित गरिए र जसले मेरो लागि धर्मयुद्ध गरे र शहीद भए,

निश्चय नै म उनका पापहरू निर्मूल गर्ने छु र तिनलाई त्यस्तो स्वर्गमा प्रवेश दिनेछु, जसको मुनिबाट नहरहरू बगिराखेका छन् । (यो) अल्लाहको तर्फबाट पुरस्कार हो र अल्लाहकहाँ नै राम्रो पुरस्कार छ ।

१९६) गाउँघरमा अनास्थावानहरूको भाग दौड तिमिहरूलाई धोकामा नपारोस् ।

لَا يَغُرَّنَّكَ تَقَلُّبُ الَّذِينَ كَفَرُوا فِي الْبِلَادِ ﴿١٩٦﴾

१९७) यो त अत्यन्त थोरै सुख सामग्री हो, यसपछि उनीहरूको ठेगाना नर्कमा छ, र त्यो नराम्रो बासस्थान हो ।

مَتَاعٌ قَلِيلٌ ثُمَّ مَأْوَاهُمْ جَهَنَّمُ ۚ وَبِئْسَ الْمِهَادُ ﴿١٩٧﴾

१९८) तर जुन मानिसहरू आफ्नो पालनहारसँग डर मान्दछन्, तिनका निम्ति जन्नतहरू छन् जसको मुनिबाट सरिताहरू प्रवाहित छन् (र) त्यसमा तिनीहरू सधैं रहने छन् । यो अल्लाहबाट असल कर्म गर्नेहरूलाई पुरस्कार हो अल्लाहको तर्फबाट, र जे जति अल्लाहकहाँ छ, त्यो धेरै राम्रो छ ।

لَٰكِنِ الَّذِينَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ جَنَّاتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا نُزُلًا مِنْ عِنْدِ اللَّهِ ۗ وَمَا عِنْدَ اللَّهِ خَيْرٌ لِلْأَبْرَارِ ﴿١٩٨﴾

१९९) निःसंदेह ! अहले किताबमध्ये केही यस्ता पनि छन्, जो कि अल्लाहमाथि र त्यो माथि जुन तिमीलाई प्रदान गरिएको छ, र त्यसमाथि जुन तिनीहरूलाई प्रदान गरिएको छ, आस्था राख्दछन् र अल्लाहको अगाडि नतमस्तक हुन्छन्

وَإِنَّ مِنْ أَهْلِ الْكِتَابِ لَمَنْ يُؤْمِنُ بِاللَّهِ وَمَا أُنْزِلَ إِلَيْكُمْ وَمَا أُنْزِلَ إِلَيْهِمْ خَاشِعِينَ لِلَّهِ لَا يَشْتَرُونَ بِآيَاتِ اللَّهِ ثَمَنًا قَلِيلًا ۗ أُولَٰئِكَ لَهُمْ أَجْرُهُمْ عِنْدَ رَبِّهِمْ ۗ إِنَّ اللَّهَ سَرِيعُ الْحِسَابِ ﴿١٩٩﴾

र अल्लाहको आयतलाई सानो तिनो मूल्यमा बेच्दैनन् । यस्ता मानिसहरूको प्रतिफल अल्लाह कहाँ तयार छ र अल्लाहले शीघ्र हिसाब लिनेवाला छ ।

२००) हे अहले ईमान ! धैर्य धारण गरिराख र कठिनाईमा दृघ रह, र धर्मयुद्धको लागि तयार रह, र अल्लाहसित डर ताकि तिमीहरू सफल हुनसक ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱصْبِرُوا۟ وَصَابِرُوا۟ وَرَابِطُوا۟ وَٱتَّقُوا۟ ٱللَّهَ لَعَلَّكُمْ تُفْلِحُونَ ﴿٢٠٠﴾



# ४-सूरतुन् निसा




सूरतुन् निसा मदनी हो र यसमा १७६ आयतहरू र २४ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ○

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु, अति कृपालु छ ।**

يٰۤاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمُ الَّذِىْ خَلَقَكُمْ
مِّنْ نَّفْسٍ وَّاحِدَةٍ وَّخَلَقَ مِنْهَا زَوْجَهَا وَبَثَّ
مِنْهُمَا رِجَالًا كَثِيْرًا وَّنِسَآءً ۚ وَاتَّقُوا اللّٰهَ
الَّذِىْ تَسَآءَلُوْنَ بِهٖ وَالْاَرْحَامَ ؕ اِنَّ اللّٰهَ
كَانَ عَلَيْكُمْ رَقِيْبًا ①

१) हे मानिसहरू ! आफ्नो पालनकर्तासित डर, जसले तिमीहरूलाई एकै प्राणीबाट सृष्टि गऱ्यो र त्यसैबाट त्यसको जोई बनायो, तत्पश्चात ती दुबैबाट धेरै नर र नारीहरू फैलाई हाल्यो । उस अल्लाहसँग डर जसको नामबाट तिमी एक-अर्कासंग माग्दछौ । र नाताको सम्बन्ध विच्छेदबाट टाढा रह । कुनै सन्देह छैन कि अल्लाह संरक्षक देखिराखेको छ ।

وَاٰتُوا الْيَتٰمٰۤى اَمْوَالَهُمْ وَلَا تَتَبَدَّلُوا الْخَبِيْثَ
بِالطَّيِّبِ ۪ وَلَا تَاْكُلُوْۤا اَمْوَالَهُمْ اِلٰۤى اَمْوَالِكُمْ ؕ
اِنَّهٗ كَانَ حُوْبًا كَبِيْرًا ②

२) अनाथहरूको सम्पत्ति तिनीहरूलाई सुम्पिहाल र पवित्र कुराको बदलामा अपवित्र चीज ग्रहण नगर । न त तिनीहरूको सम्पत्ति आफ्नो सम्पत्तिमा मिसाएर खाऊ । किनभने यो ठूलो पाप हो ।

وَاِنْ خِفْتُمْ اَلَّا تُقْسِطُوْا فِى الْيَتٰمٰى
فَانْكِحُوْا مَا طَابَ لَكُمْ مِّنَ النِّسَآءِ
مَثْنٰى وَثُلٰثَ وَرُبٰعَ ۚ فَاِنْ خِفْتُمْ اَلَّا تَعْدِلُوْا
فَوَاحِدَةً اَوْ مَا مَلَكَتْ اَيْمَانُكُمْ ؕ ذٰلِكَ اَدْنٰۤى
اَلَّا تَعُوْلُوْا ؕ ③

३) यदि तिमीलाई यस कुराको भय छ कि तिमीले अनाथ बालिकाहरूसित विवाह गरेर तिनीहरूसित न्याय गर्न सक्दैनौ भने, तिनी बाहेक तिमीले मन पराएको अन्य दुई, तीन वा चारसंग निकाह गरीहाल

र यदि यस कुराको भय छ कि सबै स्वास्नीहरूसँग समान न्यायपूर्ण व्यवहार गर्न सक्दैनौ भने त एउटै स्वास्नी प्रयाप्त छ । अथवा तिम्रो स्वामित्वमा रहने दासी । यो सम्भव छ यसबाट तिमीहरू अन्याय गर्नबाट बाँच्न सक्दछौ ।

४) र स्वास्नीहरूलाई तिनका महर राजी खुशीपूर्वक दिइहाल तर हो, यदि तिनीहरू आफ्नै राजिखुशीले केही अंश छाडि दिन्छन् भने खुशीपूर्वक त्यसलाई खान-पिन गर ।

وَاٰتُوا النِّسَآءَ صَدُقٰتِهِنَّ نِحۡلَةً ؕ فَاِنۡ طِبۡنَ لَـكُمۡ عَنۡ شَىۡءٍ مِّنۡهُ نَفۡسًا فَكُلُوۡهُ هَنِيۡٓــًٔا مَّرِیۡٓـــٴًﺎ ﴿۴﴾

५) र बुद्धिहीनहरूलाई आफ्ना माल नदेऊ जुन माललाई अल्लाहले तिम्रो जीविकाको साधन बनाएको छ । हो सोही मालबाट तिनीहरूलाई खाना कपडा दिँदै गर र उनीसित उचित कुरा गर्दै गर ।

وَلَا تُؤۡتُوا السُّفَهَآءَ اَمۡوَالَـكُمُ الَّتِىۡ جَعَلَ اللّٰهُ لَكُمۡ قِيٰمًا وَّارۡزُقُوۡهُمۡ فِيۡهَا وَاكۡسُوۡهُمۡ وَقُوۡلُوۡا لَهُمۡ قَوۡلًا مَّعۡرُوۡفًا ﴿۵﴾

६) र अनाथहरूलाई उनी बालिग नहुन्जेल हेरचाह र सुधार गर्दै गर । फेरि यदि तिनीहरूमा बुद्धिको परिपक्वता र व्यवहार कुशलता देखिन्छ भने तिनलाई तिनको सम्पत्ति सुम्पिहाल र यस भयले कि तिनीहरू वयस्क भइहाल्छन् तिनीहरूको सम्पत्ति हतारपूर्वक फजूल खर्च नगर । सम्पत्ति भएकाहरूले त्यस्तो सम्पतिबाट टाढा रहनुपर्दछ । हो, गरीब र

وَابۡتَلُوا الۡيَتٰمٰى حَتّٰٓى اِذَا بَلَغُوا النِّكَاحَ ۚ فَاِنۡ اٰنَسۡتُمۡ مِّنۡهُمۡ رُشۡدًا فَادۡفَعُوۡۤا اِلَيۡهِمۡ اَمۡوَالَهُمۡ ۚ وَلَا تَاۡكُلُوۡهَاۤ اِسۡرَافًا وَّبِدَارًا اَنۡ يَّكۡبَرُوۡا ؕ وَمَنۡ كَانَ غَنِيًّا فَلۡيَسۡتَعۡفِفۡ ۚ وَمَنۡ كَانَ فَقِيۡرًا فَلۡيَاۡكُلۡ بِالۡمَعۡرُوۡفِ ؕ فَاِذَا دَفَعۡتُمۡ اِلَيۡهِمۡ اَمۡوَالَهُمۡ فَاَشۡهِدُوۡا عَلَيۡهِمۡ ؕ وَكَفٰى بِاللّٰهِ حَسِيۡبًا ﴿۶﴾

निर्धन छ भने नियम बमोजिम न्यायोचित रूपमा केही लेओस् । र जब तिनलाई तिनको सम्पत्ति सुम्पन्छौ भने त्यतिखेर साक्षी राख्नु वास्तवमा अल्लाह नै हिसाब लिनको लागि प्रयाप्त छ ।

७) जुन सम्पत्ति आमा बाबु र नातागोताले छाडी मर्दछन्, थोरै होस् अथवा धेरै, त्यसमा लोग्ने मानिसको अंश छ र आईमाईहरूको पनि । (यी अंशहरू) निर्धारित गरिएका हुन् ।

لِلرِّجَالِ نَصِيبٌ مِّمَّا تَرَكَ الْوَالِدَانِ وَالْأَقْرَبُونَ وَلِلنِّسَاءِ نَصِيبٌ مِّمَّا تَرَكَ الْوَالِدَانِ وَالْأَقْرَبُونَ مِمَّا قَلَّ مِنْهُ أَوْ كَثُرَ ۚ نَصِيبًا مَّفْرُوضًا ﴿٧﴾

८) र जब भाग-बण्डाको समय नातेदार र अनाथ र निमुखाहरू उपस्थित भइहालुन् त त्यसबाट उनीहरूलाई पनि केही दिहाल र उनीहरूसित मिठो कुरा गर ।

وَإِذَا حَضَرَ الْقِسْمَةَ أُولُو الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينُ فَارْزُقُوهُم مِّنْهُ وَقُولُوا لَهُمْ قَوْلًا مَّعْرُوفًا ﴿٨﴾

९) र तिनीहरूलाई यस कुराबाट डराउनु पर्छ कि यदि आफ्नो पछाडि हानि पुग्न सक्ने अबोध केटाकेटीहरू छोडेर गएको भए (तिनीहरूको चाहना के हुने थियो) । त, आवश्यक छ कि यी मानिसहरू अल्लाहसँग डराएर संतुलित कुराहरू गरुन् ।

وَلْيَخْشَ الَّذِينَ لَوْ تَرَكُوا مِنْ خَلْفِهِمْ ذُرِّيَّةً ضِعَافًا خَافُوا عَلَيْهِمْ فَلْيَتَّقُوا اللَّهَ وَلْيَقُولُوا قَوْلًا سَدِيدًا ﴿٩﴾

१०) जुन मानिसहरू अनाथहरूको सम्पति नाजायज तरिकाले खान्छन्, तिनीहरू आफ्ना पेटमा आगो भर्दैछन् र निकट भविष्यमा नर्कमा जाने छन् ।

إِنَّ الَّذِينَ يَأْكُلُونَ أَمْوَالَ الْيَتَامَىٰ ظُلْمًا إِنَّمَا يَأْكُلُونَ فِي بُطُونِهِمْ نَارًا ۖ وَسَيَصْلَوْنَ سَعِيرًا ﴿١٠﴾

११) अल्लाहले तिम्रा सन्तानहरूको सम्बन्धमा तिमीलाई आदेश गर्दछ कि एउटा छोराको अंश दुईटा छोरीहरूको अंशको बराबर छ र यदि मृत्तकका छोरीहरू मात्र छिन् र दुई भन्दा बढी छिन् भने तिनलाई मृतकको सम्पत्तिबाट दुई तिहाई र यदि एउटी छोरी मात्र छिन् भने उसलाई आधा, र मृतकका आमा बाबु प्रत्येकलाई मृतकले छोडेको सम्पत्तिको छैठौं भाग अंश हो, मृतकका सन्तानहरू भएको खण्डमा । यदि मृतकको सन्तान नभए र मात्र आमा बाबु नै उसको हक़वाला भएको अवस्थामा, एक तिहाई आमाको अंश र यदि मृत्तकका दाजुभाइ पनि छन् भने आमाको छैठौं अंश हो, मृतकको सम्पत्तिको यो अंशवण्डा मृतकले गरेको इच्छापत्रको कार्यान्वयन पछि मात्र वा मृतकले लिएको ऋणको भुक्तानी गरेपछि मात्र गर्नु पर्छ । तिमीलाई थाहा छैन कि तिम्रा बाबु वा छोरा मध्ये तिमीलाई फाइदाको दृष्टिकोणले कुन चाहीँ धेरै नजिक छ । यी अंशभाग अल्लाहबाट निर्धारित गरिएका हुन् र निःसंदेह अल्लाह सर्वज्ञ र कौशलवाला हो ।

يُوصِيكُمُ اللَّهُ فِي أَوْلَادِكُمْ لِلذَّكَرِ مِثْلُ حَظِّ الْأُنثَيَيْنِ فَإِن كُنَّ نِسَاءً فَوْقَ اثْنَتَيْنِ فَلَهُنَّ ثُلُثَا مَا تَرَكَ وَإِن كَانَتْ وَاحِدَةً فَلَهَا النِّصْفُ وَلِأَبَوَيْهِ لِكُلِّ وَاحِدٍ مِّنْهُمَا السُّدُسُ مِمَّا تَرَكَ إِن كَانَ لَهُ وَلَدٌ فَإِن لَّمْ يَكُن لَّهُ وَلَدٌ وَوَرِثَهُ أَبَوَاهُ فَلِأُمِّهِ الثُّلُثُ فَإِن كَانَ لَهُ إِخْوَةٌ فَلِأُمِّهِ السُّدُسُ مِن بَعْدِ وَصِيَّةٍ يُوصِي بِهَا أَوْ دَيْنٍ آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ لَا تَدْرُونَ أَيُّهُمْ أَقْرَبُ لَكُمْ نَفْعًا فَرِيضَةً مِّنَ اللَّهِ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ﴿١١﴾

१२) जुन सम्पत्ति तिम्रा स्वास्नीहरू छोडेर मर्दछिन् यदि तिनका सन्तानहरू

وَلَكُمْ نِصْفُ مَا تَرَكَ أَزْوَاجُكُمْ إِن لَّمْ يَكُن لَّهُنَّ وَلَدٌ فَإِن كَانَ لَهُنَّ وَلَدٌ فَلَكُمُ الرُّبُعُ مِمَّا تَرَكْنَ

مِنْ بَعْدِ وَصِيَّةٍ يُوصِينَ بِهَآ أَوْ دَيْنٍ ۚ وَلَهُنَّ الرُّبُعُ
مِمَّا تَرَكْتُمْ إِن لَّمْ يَكُن لَّكُمْ وَلَدٌ ۚ فَإِن كَانَ لَكُمْ
وَلَدٌ فَلَهُنَّ الثُّمُنُ مِمَّا تَرَكْتُم ۚ مِّن بَعْدِ وَصِيَّةٍ
تُوصُونَ بِهَآ أَوْ دَيْنٍ ۗ وَإِن كَانَ رَجُلٌ يُورَثُ كَلَٰلَةً
أَوِ امْرَأَةٌ وَلَهُۥٓ أَخٌ أَوْ أُخْتٌ فَلِكُلِّ وَاحِدٍ مِّنْهُمَا
السُّدُسُ ۚ فَإِن كَانُوٓا أَكْثَرَ مِن ذَٰلِكَ فَهُمْ شُرَكَآءُ فِى
الثُّلُثِ مِنۢ بَعْدِ وَصِيَّةٍ يُوصَىٰ بِهَآ أَوْ دَيْنٍ غَيْرَ
مُضَآرٍّ ۚ وَصِيَّةً مِّنَ اللَّهِ ۗ وَاللَّهُ عَلِيمٌ حَلِيمٌ ﴿١٢﴾

छैनन् भने, त्यसबाट आधा भाग तिम्रो हुनेछ र यदि उनको सन्तान छन् भने छाडेर गएको सम्पत्तिबाट तिम्रो भाग एक चौथाई हुन्छ । (तर यो विभाजन) मृत्तकको त्यस इच्छा पत्रको कार्यान्वयन पश्चात हो जुन उसले गरेर गएको छ र उसले लिएकी ऋण तिरिसकेपछि गरिने छ र जुन सम्पत्ति तिमी (पुरुषले) छाडेर मर्छौ र यदि तिम्रा सन्तानहरू छैनन् भने तिम्रा स्वास्नीहरूको त्यसबाट एक चौथाई भाग छ र यदि सन्तान छ भने तिनलाई आठौं भाग छ । (यी भागहरू) तिम्रो इच्छापत्रको कार्यान्वयन पश्चात हो जुन तिमीले गरेका छौ र ऋणको (भुक्तानी पछि) बाँडिने छन् । र यदि यस्तो पुरुष अथवा स्वास्नी मान्छेको सम्पत्ति छ, जसको न बाबु छ न छोरा उसको एक दाजु वा भाइ अथवा एक दिदी वा बहिनी छन् भने त्यसबाट प्रत्येकलाई छैठौं भाग हुन्छ र एक भन्दा बढी छन् भने सबै एक तिहाईमा सहभागी हुनेछन् । (यी अंशहरू पनि) इच्छापत्र पूरा भएपछि तथा ऋण तिरेपछि यो शर्तमा कि कसैलाई हानि नोक्सानी न पुगेको होस् । यो अल्लाहको तर्फबाट निर्धारित गरिएको हो र अल्लाह सर्वज्ञ तथा सहनशील छ ।

१३) यी सीमाहरू अल्लाहबाट निर्धारित गरिएका हुन् र जसले अल्लाह र उसको पैगम्बरको आज्ञा पालन गर्नेछ, उसलाई अल्लाहले जन्नतमा प्रवेश दिनेछ, जसको मुनि नहरहरू बगिराखेका छन् । जसमा तिनीहरू सधैं बासगर्ने छन् र यो ठूलो सफलता हो ।

تِلْكَ حُدُوْدُ اللّٰهِ ۭ وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ يُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ۭ وَذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٣﴾

१४) र जसले अल्लाह र उसको रसूल (स.) को आज्ञा उल्लघंन गर्नेछ र उसबाट निर्धारित सीमाको अतिक्रमण गर्दछ, त्यसलाई अल्लाहले नर्कमा हाल्ने छ, जसमा कि ऊ सधैं रहने छ र त्यस्तैलाई यो अपमानजनक सजाय हो ।

وَمَنْ يَّعْصِ اللّٰهَ وَرَسُوْلَهٗ وَيَتَعَدَّ حُدُوْدَهٗ يُدْخِلْهُ نَارًا خَالِدًا فِيْهَا ۠ وَلَهٗ عَذَابٌ مُّهِيْنٌ ﴿١٤﴾

१५) तिम्रा आईमाईहरू मध्ये यदि कसैले व्यभिचार गर्दछिन भने त्यसको प्रमाणको निम्ति आफूमध्येबाट चार जनाको साक्ष्य प्रस्तुत गर । यदि तिनीहरूले गवाही दिन्छन् भने ती आईमाईहरूलाई मृत्यु नहुन्जेलसम्म घरैमा थुनिराख अथवा अल्लाहले तिनको लागि अर्को कुनै बाटो निकालोस् ।

وَالّٰتِيْ يَاْتِيْنَ الْفَاحِشَةَ مِنْ نِّسَاۗىِٕكُمْ فَاسْتَشْهِدُوْا عَلَيْهِنَّ اَرْبَعَةً مِّنْكُمْ ۚ فَاِنْ شَهِدُوْا فَاَمْسِكُوْھُنَّ فِي الْبُيُوْتِ حَتّٰى يَتَوَفّٰىھُنَّ الْمَوْتُ اَوْ يَجْعَلَ اللّٰهُ لَھُنَّ سَبِيْلًا ﴿١٥﴾

१६) र तिमीहरूमध्ये जुन दुई जनाले यस्तो व्यभिचार गर्दछन्, तिनलाई कष्ट देऊ यदि तिनी पश्चाताप गरी असल मानिसहरूमा परिणत हुन्छन् भने तिनलाई छाडिदेऊ ।

وَالَّذٰنِ يَاْتِيٰنِھَا مِنْكُمْ فَاٰذُوْھُمَا ۚ فَاِنْ تَابَا وَاَصْلَحَا فَاَعْرِضُوْا عَنْهُمَا ۭ اِنَّ اللّٰهَ كَانَ تَوَّابًا رَّحِيْمًا ﴿١٦﴾

निःसन्देह अल्लाह क्षमा याचनालाई स्वीकार गर्ने र कृपा गर्नेवाला हो ।

إِنَّمَا التَّوْبَةُ عَلَى اللّٰهِ لِلَّذِيْنَ يَعْمَلُوْنَ السُّوْٓءَ
بِجَهَالَةٍ ثُمَّ يَتُوْبُوْنَ مِنْ قَرِيْبٍ
فَاُولٰٓئِكَ يَتُوْبُ اللّٰهُ عَلَيْهِمْ ۗ وَكَانَ
اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٧﴾

१७) अल्लाहले तिनको मात्र क्षमायाचना स्वीकार गर्दछ, जसले अज्ञानतावश कुनै दुष्कर्म गर्दछन् र छिट्टै त्यसलाई छोडेर पश्चाताप गरिहाल्छन् । तसर्थ यस्ता मानिसहरूको पश्चाताप अल्लाहले पनि स्वीकार गर्दछ अल्लाह सबै कुराको ज्ञानी र कौशलवाला हो ।

وَلَيْسَتِ التَّوْبَةُ لِلَّذِيْنَ يَعْمَلُوْنَ
السَّيِّاٰتِ ۚ حَتّٰىٓ اِذَا حَضَرَ اَحَدَهُمُ الْمَوْتُ
قَالَ اِنِّيْ تُبْتُ الْـٰٔنَ وَلَا الَّذِيْنَ يَمُوْتُوْنَ
وَهُمْ كُفَّارٌ ۗ اُولٰٓئِكَ اَعْتَدْنَا لَهُمْ عَذَابًا
اَلِيْمًا ﴿١٨﴾

१८) र, यस्ता मानिसहरूको पश्चाताप (तौबा) स्वीकार हुँदैन जसले दुष्कर्म (निरन्तर) गर्दछन् । यहाँसम्म कि जब तिनीहरूमध्ये कसैको मृत्यु भई दिन्छ, अनि भन्दछ कि म पश्चाताप गर्दछु । र न त उनको पश्चाताप स्वीकार हुनेछ जो कुफ्रको अवस्थामा मर्दछन् । यिनै मानिसहरूका लागि हामीले कष्टदायक सजाय तयार गरिसकेका छौं ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا يَحِلُّ لَكُمْ اَنْ تَرِثُوا النِّسَآءَ
كَرْهًا ۗ وَلَا تَعْضُلُوْهُنَّ لِتَذْهَبُوْا بِبَعْضِ مَآ
اٰتَيْتُمُوْهُنَّ اِلَّآ اَنْ يَّاْتِيْنَ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ ۚ
وَعَاشِرُوْهُنَّ بِالْمَعْرُوْفِ ۚ فَاِنْ كَرِهْتُمُوْهُنَّ فَعَسٰٓى
اَنْ تَكْرَهُوْا شَيْـًٔا وَّيَجْعَلَ اللّٰهُ فِيْهِ خَيْرًا كَثِيْرًا ﴿١٩﴾

१९) ईमानवालाहरू हो ! तिमीहरूलाई यो उचित छैन कि जबरजस्ती स्वास्नी मानिसहरूको सम्पत्तिबाट लेऊ । जे तिमीले तिनलाई दिएका छौ, त्यसबाट केही खाने नियतले तिनलाई न रोकी राख्नु । हो यदि तिनले दुष्कर्म गर्दछिन् त कुरा अर्कै छ । तिनीहरूसित राम्रो व्यवहार

गर यदि तिनीहरूलाई तिमीले मन नपराए पनि, तर धेरै सम्भव छ कि तिमीले नराम्रो मानेको कुनै कुरामा अल्लाहले धेरै भलाईको सृजना गरिदिओस् ।

وَاِنْ اَرَدْتُّمُ اسْتِبْدَالَ زَوْجٍ مَّكَانَ زَوْجٍ ۙ وَّاٰتَيْتُمْ اِحْدٰىهُنَّ قِنْطَارًا فَلَا تَاْخُذُوْا مِنْهُ شَيْـًٔا ؕ اَتَاْخُذُوْنَهٗ بُهْتَانًا وَّاِثْمًا مُّبِيْنًا ﴿٢٠﴾

२०) र, यदि तिमीले एउटी स्वास्नीको ठाउँमा दोस्रो स्वास्नी राख्न नै चाहन्छौ र ती मध्ये कसैलाई तिमीले ठूलो सम्पत्ति दिइसकेका छौ भने पनि त्यसबाट केही नलिनु । के तिमीले अनुचित रूपले वा खुला रूपले पाप हुने भएर पनि त्यसबाट फिर्ता लिने छौ ।

وَكَيْفَ تَاْخُذُوْنَهٗ وَقَدْ اَفْضٰى بَعْضُكُمْ اِلٰى بَعْضٍ وَّاَخَذْنَ مِنْكُمْ مِّيْثَاقًا غَلِيْظًا ﴿٢١﴾

२१) तिमी त्यसलाई कसरी लिने छौ ? यद्यपि तिमीहरूले एक अर्कालाई भेटी सकेका छौ र ती स्वास्नी मानिसहरूले तिमीबाट पूर्ण रूपले वाचा लिइसकेका छिन् ।

وَلَا تَنْكِحُوْا مَا نَكَحَ اٰبَآؤُكُمْ مِّنَ النِّسَآءِ اِلَّا مَا قَدْ سَلَفَ ؕ اِنَّهٗ كَانَ فَاحِشَةً وَّمَقْتًا ؕ وَسَآءَ سَبِيْلًا ﴿٢٢﴾ ع

२२) र जुन स्वास्नी मानिसहरूसँग तिम्रा बाबुहरूले विवाह गरेका छन्, तिनीहरूसँग निकाह नगर्नु, तर जे बिती सकेको छ त्यो निर्लज्जतापूर्ण काम र अप्रसन्न पार्ने कुरा र साह्रै घृणित परम्परा थियो ।

حُرِّمَتْ عَلَيْكُمْ اُمَّهٰتُكُمْ وَبَنٰتُكُمْ وَاَخَوٰتُكُمْ وَعَمّٰتُكُمْ وَخٰلٰتُكُمْ وَبَنٰتُ الْاَخِ وَبَنٰتُ الْاُخْتِ وَاُمَّهٰتُكُمُ الّٰتِيْۤ اَرْضَعْنَكُمْ وَاَخَوٰتُكُمْ مِّنَ الرَّضَاعَةِ وَاُمَّهٰتُ نِسَآئِكُمْ وَرَبَآئِبُكُمُ الّٰتِيْ فِيْ حُجُوْرِكُمْ مِّنْ نِّسَآئِكُمُ

२३) तिम्रो लागि तिम्रा आमाहरू र छोरीहरू र दिदी बहिनीहरू र तिम्रा फूफूहरू र तिम्रा सानी आमा, ठूली आमाहरू र भतिजीहरू र

الّٰتِيْ دَخَلْتُمْ بِهِنَّ ۫ فَاِنْ لَّمْ تَكُوْنُوْا دَخَلْتُمْ بِهِنَّ فَلَا جُنَاحَ عَلَيْكُمْ ۫ وَحَلَآئِلُ اَبْنَآئِكُمُ الَّذِيْنَ مِنْ اَصْلَابِكُمْ ۙ وَاَنْ تَجْمَعُوْا بَيْنَ الْاُخْتَيْنِ اِلَّا مَا قَدْ سَلَفَ ؕ اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿٢٣﴾ ۙ

भान्जीहरू र तिम्रा ती आमाहरू जसले कि तिमीलाई दूध ख्वाएका छिन्, र (रेजाई) दिदीबहिनीहरू र तिम्रा सासूहरू र तिमीले तिम्रो गोदमा लालन पालन गरेको छोरीहरू जुन संभोग गरेको महिलाबाट जन्मेका छिन् तिम्रो लागि वर्जित छिन् । हो यदि तिमीले तिनीहरूसँग (केटीको आमासँग) यौन सम्बन्ध गरेका छैनौ भने तिमीलाई कुनै गुनाह छैन, र तिम्रा साख्खै छोराहरूका स्वास्नीहरू पनि र दुई दिदी बहिनीहरूलाई एकैसाथ बिहे गर्नु पनि त्याज्य छ। तर विगतमा जे भयो भइसक्यो । निःसन्देह अल्लाह क्षमा गर्नेवाला र दयावान छ ।

وَّالْمُحْصَنٰتُ مِنَ النِّسَآءِ اِلَّا مَا مَلَكَتْ اَيْمَانُكُمْ ۚ كِتٰبَ اللّٰهِ عَلَيْكُمْ ۚ وَاُحِلَّ لَكُمْ مَّا وَرَآءَ ذٰلِكُمْ اَنْ تَبْتَغُوْا بِاَمْوَالِكُمْ مُّحْصِنِيْنَ غَيْرَ مُسٰفِحِيْنَ ؕ فَمَا اسْتَمْتَعْتُمْ بِهٖ مِنْهُنَّ فَاٰتُوْهُنَّ اُجُوْرَهُنَّ فَرِيْضَةً ؕ وَلَا جُنَاحَ عَلَيْكُمْ فِيْمَا تَرٰضَيْتُمْ بِهٖ مِنْۢ بَعْدِ الْفَرِيْضَةِ ؕ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ﴿٢٤﴾

२४) र विवाहित स्त्रीहरू पनि (वर्जित छिन्) तर ती बाहेक जुनकि (दासीको रूपमा) तिम्रो अधिकारमा आउँछिन् । यो आदेश अल्लाहको तर्फबाट तिम्रोलागि अनिवार्य गरिएको हो र यी वर्जित स्त्रीहरू बाहेक अन्य स्त्रीहरू तिम्रो लागि हलाल छिन्, आफ्नो धनबाट महर दिएर तिनीहरूसँग विवाह गर्न चाहन्छौ भने, तर यो शर्तमा निकाहको उद्देश्य दुराचारबाट बच्नु हुनुपर्छ न कि वासनाको पूर्तिको निम्ति । तसर्थ जुन स्त्रीहरूसँग

तिमीले लाभ प्राप्त गर्दछौ, तिनलाई महरमा निर्धारित गरिएको धन दिइहाल र यदि महर निर्धारित गरिसकेपछि आपसी सहमतिबाट अन्यथा तय गर्दछौ भने त्यसमा तिमीलाई कुनै पाप लाग्दैन। निःसन्देह अल्लाह सबै कुराको ज्ञाता छ (र) सम्पूर्ण रूपले तत्वज्ञ छ।

وَمَنْ لَّمْ يَسْتَطِعْ مِنْكُمْ طَوْلًا اَنْ يَّنْكِحَ الْمُحْصَنٰتِ
الْمُؤْمِنٰتِ فَمِنْ مَّا مَلَكَتْ اَيْمَانُكُمْ مِّنْ فَتَيٰتِكُمُ
الْمُؤْمِنٰتِ ۭ وَاللّٰهُ اَعْلَمُ بِاِيْمَانِكُمْ ۭ بَعْضُكُمْ مِّنْۢ
بَعْضٍ ۚ فَانْكِحُوْهُنَّ بِاِذْنِ اَهْلِهِنَّ وَاٰتُوْهُنَّ
اُجُوْرَهُنَّ بِالْمَعْرُوْفِ مُحْصَنٰتٍ غَيْرَ مُسٰفِحٰتٍ وَّلَا
مُتَّخِذٰتِ اَخْدَانٍ ۚ فَاِذَآ اُحْصِنَّ فَاِنْ اَتَيْنَ
بِفَاحِشَةٍ فَعَلَيْهِنَّ نِصْفُ مَا عَلَى الْمُحْصَنٰتِ مِنَ
الْعَذَابِ ۭ ذٰلِكَ لِمَنْ خَشِيَ الْعَنَتَ مِنْكُمْ ۭ وَاَنْ تَصْبِرُوْا
خَيْرٌ لَّكُمْ ۭ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٥﴾

२५) र तिमीहरूमध्ये जुन मानिससलाई स्वतन्त्र मुसलमान स्त्रीसँग निकाह गर्ने पूरा क्षमता छैन, त्यसले मुसलमान दासीसँगै, जोकी तिम्रा अधिकारमा आइसकेकाछिन्, निकाह गरिहालोस् र अल्लाहलाई तिम्रो ईमानबारे राम्ररी थाहा छ ! तिमीहरू एक आपसमा सजातीय हौ, तसर्थ ती दासीहरूसँग, तिनका मालिकहरूबाट अनुमति प्राप्त गरी निकाह गरिहाल र निर्धारित गरिए बमोजिम तिनका महर पनि दिइहाल तर यो शर्त छ कि तिनीहरू पवित्र हुनुपर्दछ न कि व्यभिचारीणी, जसले खुल्लम खुल्ला वा लुकिछिपी अन्य व्यक्तिहरूसँग सम्बन्ध स्थापित गर्दछन्। तर यदि निकाह भइसकेपछि तिनीहरू व्यभिचार गर्दछिन भने जुन स्वतन्त्र स्त्रीहरूलाई छ, त्यसको आधा तिनीहरूलाई सजाय दिनुपर्दछ।

(दासी संग निकाह गर्ने) यो अनुमति उस व्यक्तिलाई छ जसलाई व्यभिचार गरिहाल्ने भय छ। र तिमीले धैर्य राख्नु धेरै राम्रो छ, र अल्लाह क्षमादाता र अत्यन्त दयावान छ ।

يُرِيدُ اللَّهُ لِيُبَيِّنَ لَكُمْ وَيَهْدِيَكُمْ سُنَنَ الَّذِينَ مِن
قَبْلِكُمْ وَيَتُوبَ عَلَيْكُمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٢٦﴾

२६) अल्लाह चाहन्छ कि (आफ्ना आयतहरू) तिम्रो सामु अति स्पष्ट रूपमा वर्णन गरोस् र तिमीलाई तिमीभन्दा अगाडिका संयमीहरूकै बाटोमा हिडाओस् र तिम्रो पश्चाताप स्वीकार गरोस् र अल्लाह सर्वज्ञ छ (र)सर्व बुद्धि सम्पन्न छ ।

وَاللَّهُ يُرِيدُ أَن يَتُوبَ عَلَيْكُمْ وَيُرِيدُ الَّذِينَ
يَتَّبِعُونَ الشَّهَوَاتِ أَن تَمِيلُوا مَيْلًا عَظِيمًا ﴿٢٧﴾

२७) र अल्लाह चाहन्छ कि तिम्रो पश्चाताप स्वीकार गरोस् र जुन मानिसहरू आफ्नै स्वार्थपूर्ण चाहनाबाट दोषित हुन्छन्, तिनीहरू चाहन्छन् कि तिमी आफ्नो सत्य मार्गबाट धेरै विचलित भइहाल ।

يُرِيدُ اللَّهُ أَن يُخَفِّفَ عَنكُمْ ۚ وَخُلِقَ الْإِنسَانُ
ضَعِيفًا ﴿٢٨﴾

२८) अल्लाह चाहन्छ कि तिमीहरूमाथिको भार हलुको पारोस्, किनभने मानिस कमजोर सृष्टि गरिएको हो ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَأْكُلُوا أَمْوَالَكُم بَيْنَكُم
بِالْبَاطِلِ إِلَّا أَن تَكُونَ تِجَارَةً عَن تَرَاضٍ
مِّنكُمْ ۚ وَلَا تَقْتُلُوا أَنفُسَكُمْ ۚ إِنَّ اللَّهَ كَانَ بِكُمْ
رَحِيمًا ﴿٢٩﴾

२९) हे मोमिनहरू ! तिमीहरू आपसमा एक अर्काको सम्पत्ति अनुचित रूपमा नखाऊ । तर आपसी सहमतिले व्यापारको माध्यमबाट लेनदेनमा लाभ जायज हुन्छ, र आफूलाई आफै नमार । यसमा

कुनै सन्देह छैन कि अल्लाह तिमीमाथि धेरै कृपालु छ ।

وَمَنْ يَّفْعَلْ ذٰلِكَ عُدْوَانًا وَّظُلْمًا فَسَوْفَ نُصْلِيْهِ نَارًا ۚ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ﴿٣٠﴾

३०) यदि कसैले यस्तो अटेरिपन र अत्याचार गर्छ भने हामीले त्यसलाई शीघ्र नै नर्कको आगोमा हाल्ने छौं । यो अल्लाहको लागि अति सरल काम हो ।

اِنْ تَجْتَنِبُوْا كَبَآئِرَ مَا تُنْهَوْنَ عَنْهُ نُكَفِّرْ عَنْكُمْ سَيِّاٰتِكُمْ وَنُدْخِلْكُمْ مُّدْخَلًا كَرِيْمًا ﴿٣١﴾

३१) यदि तिमीहरू यी ठूला-ठूला पापहरू जुन तिम्रो लागि निषेधित गरिएका छन्, बच्ने गर्छौ भने तिम्रा सा-साना पापहरू माफ गरिदिनेछौं र तिमीलाई सम्मान र आदरको ठाउँमा प्रवेश गराउने छौं ।

وَلَا تَتَمَنَّوْا مَا فَضَّلَ اللّٰهُ بِهٖ بَعْضَكُمْ عَلٰى بَعْضٍ ۚ لِلرِّجَالِ نَصِيْبٌ مِّمَّا اكْتَسَبُوْا ۚ وَلِلنِّسَآءِ نَصِيْبٌ مِّمَّا اكْتَسَبْنَ ۚ وَسْـَٔلُوا اللّٰهَ مِنْ فَضْلِهٖ ۚ اِنَّ اللّٰهَ كَانَ بِكُلِّ شَيْءٍ عَلِيْمًا ﴿٣٢﴾

३२) र जुन कुरामा अल्लाहले तिमीहरू मध्ये केहीलाई केही माथि श्रेष्ठता प्रदान गरेको छ, त्यसको लागि लोभ नगर । पुरुषहरूलाई तिनीहरूले गरेको कर्म अनुसार प्रतिफल निर्धारित छ, र स्त्रीहरूलाई तिनीहरूको कर्म अनुसार फल प्रदान गरिनेछ, र अल्लाहसित उसको कृपा माग्दै गर । नि:सन्देह अल्लाह प्रत्येक कुरो जान्दछ ।

وَلِكُلٍّ جَعَلْنَا مَوَالِيَ مِمَّا تَرَكَ الْوَالِدٰنِ وَالْاَقْرَبُوْنَ ۚ وَالَّذِيْنَ عَقَدَتْ اَيْمَانُكُمْ فَاٰتُوْهُمْ نَصِيْبَهُمْ ۚ اِنَّ اللّٰهَ كَانَ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدًا ﴿٣٣﴾

३३) र जुन सम्पत्ति आमा-बाबु र नातेदार छोडेर मर्दछन्, त्यसबाट हामीले प्रत्येकको हक निर्धारित गरिसकेका छौं र जुन मानिसहरूसित तिमीले आफै करार गरिसकेका

छौ, तिनीहरूलाई तिनको हक देऊ । निःसन्देह अल्लाह सम्पूर्ण कुराहरूको साक्षी छ ।

ٱلرِّجَالُ قَوَّٰمُونَ عَلَى ٱلنِّسَآءِ بِمَا فَضَّلَ ٱللَّهُ
بَعْضَهُمْ عَلَىٰ بَعْضٍ وَبِمَآ أَنفَقُوا۟ مِنْ أَمْوَٰلِهِمْ ۚ
فَٱلصَّٰلِحَٰتُ قَٰنِتَٰتٌ حَٰفِظَٰتٌ لِّلْغَيْبِ بِمَا حَفِظَ ٱللَّهُ ۚ
وَٱلَّٰتِى تَخَافُونَ نُشُوزَهُنَّ فَعِظُوهُنَّ وَٱهْجُرُوهُنَّ
فِى ٱلْمَضَاجِعِ وَٱضْرِبُوهُنَّ ۖ فَإِنْ أَطَعْنَكُمْ فَلَا
تَبْغُوا۟ عَلَيْهِنَّ سَبِيلًا ۗ إِنَّ ٱللَّهَ كَانَ عَلِيًّا
كَبِيرًا ﴿٣٤﴾

३४) पुरुषहरू स्त्रीहरूका संरक्षक-संवर्धक हुन् यस कारण कि एकलाई अल्लाहले अर्को माथि प्रधानता प्रदान गरेको छ र यसकारणले पनि कि पुरुषहरूले आफ्ना माल खर्च गरेका छन् । अतः जो सत्यवती र आज्ञाकारिणी स्वास्नी छिन्, तिनीहरूले आफ्नो पतिको अनुपस्थितिमा अल्लाहको रक्षामा तिनको मर्यादाको रेखदेख गर्दछिन्, र जुन स्वास्नीहरूको सम्बन्धमा तिमीलाई नराम्रो व्यवहारको डर लाग्दछ भने तिनलाई सर्वप्रथम सम्झाऊ । (यदि मान्दैनन् भने) तिनीलाई सुत्ने ओछ्यानबाट अलग गरिहाल । यदि तैपनि मान्दैनन् भने उचित शारीरिक दण्ड देउ । फेरि यदि आज्ञा पालन गर्न थाल्छिन् भने तिनलाई कष्ट दिने निहु नखोज । निःसन्देह अल्लाह सर्वोच्च र महानतम प्रशंसनीय छ ।

وَإِنْ خِفْتُمْ شِقَاقَ بَيْنِهِمَا فَٱبْعَثُوا۟ حَكَمًا
مِّنْ أَهْلِهِۦ وَحَكَمًا مِّنْ أَهْلِهَآ إِن يُرِيدَآ
إِصْلَٰحًا يُوَفِّقِ ٱللَّهُ بَيْنَهُمَآ ۗ إِنَّ ٱللَّهَ كَانَ عَلِيمًا
خَبِيرًا ﴿٣٥﴾

३५) यदि तिमीलाई लोग्ने स्वास्नी बीच वाद- विवादको भय छ, भने एउटा मध्यस्थकर्ता लोग्नेको तर्फबाट र एउटा मध्यस्थ स्वास्नीको खलकबाट नियुक्त गर । यदि यी दुवैले मेल मिलाप गराउन

चाहन्छन् भने अल्लाहले दुवैमा मेलमिलाप कायम गराइदिन्छ। कुनै सन्देह छैन कि अल्लाह सर्वज्ञाता र सर्वलौकिक छ।

३६) रअल्लाहकै पूजा गर र उसको साथमा अरु कसैको साझेदारी नगर र आमा-बाबुसँग सम्मानपूर्ण व्यवहार गर र नजिकका नातेदार, अनाथहरू र गरीब असहायहरू र नातेदार छिमेकीहरू र गैर नातेदारी छिमेकीहरू र संगै उठ्बस् गर्ने साथीहरू र बटुवाहरू र जो तिम्रो स्वामित्वमा छन्, सबैको उपकार गर। नि:सन्देह अल्लाहले घमण्डी तथा मिथ्या अभिमान गर्नेहरूलाई रुचाउँदैनन्।

وَاعْبُدُوا اللّٰهَ وَلَا تُشْرِكُوْا بِهٖ شَيْـًٔا وَّبِالْوَالِدَيْنِ اِحْسَانًا وَّبِذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَالْجَارِ ذِي الْقُرْبٰى وَالْجَارِ الْجُنُبِ وَالصَّاحِبِ بِالْجَنْۢبِ وَابْنِ السَّبِيْلِ ۙ وَمَا مَلَكَتْ اَيْمَانُكُمْ ۭ اِنَّ اللّٰهَ لَا يُحِبُّ مَنْ كَانَ مُخْتَالًا فَخُوْرَا ۟

३७) जिनीहरूले आफू स्वयं कन्जूसी गर्दछन् र अरुलाई पनि कन्जूसी सिकाउँछन् र जुन धन सम्पत्ति अल्लाहले आफ्नो कृपाले प्रदान गरेको छ, त्यसलाई लुकाएर राख्दछन्। हामी कृतघ्नहरूका लागि अपमानजनक सजाय तयार गरेका छौं।

اِلَّذِيْنَ يَبْخَلُوْنَ وَيَاْمُرُوْنَ النَّاسَ بِالْبُخْلِ وَيَكْتُمُوْنَ مَآ اٰتٰىهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۭ وَاَعْتَدْنَا لِلْكٰفِرِيْنَ عَذَابًا مُّهِيْنًا ۟

३८) र, जुन मानिस खर्च त गर्दछन् तर मानिसहरूलाई देखाउनको निम्ति र आस्था न अल्लाहमाथि राख्दछन् न त कियामतको दिनमाथि र जुन मानिसहरूको साथी शैतान हुन्छ, त्यो एकदमै नराम्रो साथी हो।

وَالَّذِيْنَ يُنْفِقُوْنَ اَمْوَالَهُمْ رِئَاۗءَ النَّاسِ وَلَا يُؤْمِنُوْنَ بِاللّٰهِ وَلَا بِالْيَوْمِ الْاٰخِرِ ۭ وَمَنْ يَّكُنِ الشَّيْطٰنُ لَهٗ قَرِيْنًا فَسَاۗءَ قَرِيْنًا ۟

وَمَاذَا عَلَيْهِمْ لَوْ اٰمَنُوْا بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَاَنْفَقُوْا مِمَّا رَزَقَهُمُ اللّٰهُ ۗ وَكَانَ اللّٰهُ بِهِمْ عَلِيْمًا ﴿٣٩﴾

३९) साँच्चै के बिग्रन्थ्यो यिनीहरूको यदि तिनीहरूले अल्लाह र कियामतको दिनमाथि आस्था राखेको भए र अल्लाहले जे जति प्रदान गरेको छ, त्यसमध्येबाट खर्च गरेको भए ? र अल्लाहले तिनीहरूलाई राम्ररी जान्दछ ।

اِنَّ اللّٰهَ لَا يَظْلِمُ مِثْقَالَ ذَرَّةٍ ۚ وَاِنْ تَكُ حَسَنَةً يُّضٰعِفْهَا وَيُؤْتِ مِنْ لَّدُنْهُ اَجْرًا عَظِيْمًا ﴿٤٠﴾

४०) यसमा कुनै शंका छैन कि अल्लाह कसैसित अलिकति पनि अन्याय गर्दैन, यदि पुण्य काम गरिएको छ भने त्यसलाई दुई गुणा गरिदिन्छ र आफ्नो तर्फबाट ठूलो पुरस्कार प्रदान गर्दछ ।

فَكَيْفَ اِذَا جِئْنَا مِنْ كُلِّ اُمَّةٍ بِشَهِيْدٍ وَّجِئْنَا بِكَ عَلٰى هٰۤؤُلَاۤءِ شَهِيْدًا ﴿٤١﴾

४१) त, त्यस दिन कस्तो दृष्य हुनेछ जब हामीले प्रत्येक समूहबाट एक-एक साक्षी बोलाउनेछौं र तपाईलाई उनीहरूको बारेमा साक्षी बनाउने छौं ।

يَوْمَئِذٍ يَّوَدُّ الَّذِيْنَ كَفَرُوْا وَعَصَوُا الرَّسُوْلَ لَوْ تُسَوّٰى بِهِمُ الْاَرْضُ ۗ وَلَا يَكْتُمُوْنَ اللّٰهَ حَدِيْثًا ﴿٤٢﴾

४२) त्यस दिन अल्लाहमाथि आस्था नराख्नेहरू र पैगम्बरका अवज्ञाकारीहरूले चाहनेछन् कि तिनीलाई धर्तीमा गाडि माटोले पुरिदिए हुन्थ्यो । किनभने अल्लाहसित कुनै कुरा लुकाउन सक्ने छैनन् ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَقْرَبُوا الصَّلٰوةَ وَاَنْتُمْ سُكٰرٰى حَتّٰى تَعْلَمُوْا مَا تَقُوْلُوْنَ وَلَا جُنُبًا اِلَّا عَابِرِيْ سَبِيْلٍ حَتّٰى تَغْتَسِلُوْا ۗ وَاِنْ كُنْتُمْ مَّرْضٰۤى اَوْ عَلٰى سَفَرٍ اَوْ جَاۤءَ اَحَدٌ مِّنْكُمْ مِّنَ الْغَآئِطِ اَوْ لٰمَسْتُمُ النِّسَآءَ فَلَمْ تَجِدُوْا مَآءً

४३) हे मोमिनहरू ! जब तिमी नशाको अवस्थामा हुन्छौ त नमाज छेउ पनि नजाऊ जबसम्म तिमी आफ्नो मुखबाट उच्चारित शब्दहरू बुझ्न थाल्दैनौ र अपवित्राताको अवस्थामा

فَتَيَمَّمُوْا صَعِيْدًا طَيِّبًا فَامْسَحُوْا بِوُجُوْهِكُمْ وَاَيْدِيْكُمْ ؕ اِنَّ اللّٰهَ كَانَ عَفُوًّا غَفُوْرًا ۝٤٣

स्नान नगरेसम्म पनि नमाज नपढ । तर यदि यात्रा गरिराखेको भए कुरा अर्कै छ र यदि तिमी विरामी छौ अथवा यात्रामा छौ वा तिमीमध्ये कोही शौचबाट आएको छ अथवा तिमीले स्वास्नीसँग सहवास गरेका छौ र तिमीलाई पानी उपलब्ध छैन भने पवित्र माटो लिई मुख र हातमा स्पर्श गरेर तयम्मुम गरी (नमाज पढिहाल) । निःसन्देह अल्लाह त्रुटिहरू माफ गर्नेवाला तथा क्षमादाता छ ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ اُوْتُوْا نَصِيْبًا مِّنَ الْكِتٰبِ يَشْتَرُوْنَ الضَّلٰلَةَ وَيُرِيْدُوْنَ اَنْ تَضِلُّوا السَّبِيْلَ ۝٤٤

४४) के तिमीले तिनीहरूलाई देखेनौ जसलाई कि किताबको केही अंश प्रदान गरिएको छ ? तिनीहरूले पथ भ्रष्टता किनिरहेका छन्, र चाहन्छन् कि तिमी पनि पथविचलित भइहाल ।

وَاللّٰهُ اَعْلَمُ بِاَعْدَآئِكُمْ ؕ وَكَفٰى بِاللّٰهِ وَلِيًّا ۙ وَّكَفٰى بِاللّٰهِ نَصِيْرًا ۝٤٥

४५) अल्लाह तिम्रा शत्रुहरूलाई राम्ररी जान्दछ, र अल्लाहको मित्रता नै प्रयाप्त छ । र अल्लाहको सहायता नै पर्याप्त छ ।

مِنَ الَّذِيْنَ هَادُوْا يُحَرِّفُوْنَ الْكَلِمَ عَنْ مَّوَاضِعِهٖ وَيَقُوْلُوْنَ سَمِعْنَا وَعَصَيْنَا وَاسْمَعْ غَيْرَ مُسْمَعٍ وَّرَاعِنَا لَيًّا بِاَلْسِنَتِهِمْ وَطَعْنًا فِى الدِّيْنِ ؕ وَلَوْ اَنَّهُمْ قَالُوْا سَمِعْنَا وَاَطَعْنَا وَاسْمَعْ وَانْظُرْنَا لَكَانَ خَيْرًا لَّهُمْ وَاَقْوَمَ ۙ وَلٰكِنْ لَّعَنَهُمُ اللّٰهُ بِكُفْرِهِمْ فَلَا يُؤْمِنُوْنَ اِلَّا قَلِيْلًا ۝٤٦

४६) केही यहूदीहरूले शब्दहरूलाई (अल्लाहले भनेका) तिनका ठीक ठाउँबाट परिवर्तित गरिदिन्छन् र भन्दछन् कि हामीले सुन्यौ र मानेनौं र (हाम्रो) सुन ! र तिम्रो न सुनिए कै अवस्थामा । र हाम्रो ध्यान राख तर यो भन्दा आफ्नो जिभ्रो बटारी

धर्ममा खिसी गर्दछन् र यदि यिनीहरूले भनेको भए कि हामीले सुन्यौं र मानिहाल्यौ र (तपाई सुन्नुस् र हामीलाई हेर्नुस् त यो तिनिहरूको निम्ति धेरै राम्रो र उचित पनि हुन्थ्यो । तर अल्लाह तिनीहरूको कुफ्रको कारण तिनीहरूलाई अभिशप्त गरिहालेको छ तसर्थ थोरैले मात्र आस्था राख्दछन् ।

४७) हे किताबवालाहरू हामीले जे उतारेका छौ जसले तिम्रो पासमा जो छ त्यसको पनि पुष्टि गर्दैछ, त्यसमाथि ईमान ल्याऊ । यसभन्दा अगाडि कि हामीले मानिसहरूको अनुहार बिगारी तिनलाई पिठ्यूतिर फर्काइ दिऊँ अथवा तिनीहरूलाई अभिशप्त गरौं जस्तो कि शनिबार वालाहरूलाई अभिशप्त गरेका थियौ, अल्लाहले जुन कुराको आदेश दियो त्यो भएर नै रहन्छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ ءَامِنُوا۟ بِمَا نَزَّلْنَا مُصَدِّقًا لِّمَا مَعَكُم مِّن قَبْلِ أَن نَّطْمِسَ وُجُوهًا فَنَرُدَّهَا عَلَىٰٓ أَدْبَارِهَآ أَوْ نَلْعَنَهُمْ كَمَا لَعَنَّآ أَصْحَٰبَ ٱلسَّبْتِ ۚ وَكَانَ أَمْرُ ٱللَّهِ مَفْعُولًا ﴿٤٧﴾

४८) नि:सन्देह अल्लाह आफ्नो साझेदार बनाउनेलाई क्षमा गर्ने छैन र उस बाहेक अन्य जसलाई चाहन्छ माफ गरिदिन्छ र जसले उसँग कसैको साझेदारी ठहराउँछ, त्यसले जघन्य अपराध गर्दछ ।

إِنَّ ٱللَّهَ لَا يَغْفِرُ أَن يُشْرَكَ بِهِۦ وَيَغْفِرُ مَا دُونَ ذَٰلِكَ لِمَن يَشَآءُ ۚ وَمَن يُشْرِكْ بِٱللَّهِ فَقَدِ ٱفْتَرَىٰٓ إِثْمًا عَظِيمًا ﴿٤٨﴾

४९) के तिमीले तिनीहरूलाई देखेनौ जसले कि आफूलाई पवित्र ठान्दछन् । बरु अल्लाहले जसलाई चाहन्छ

أَلَمْ تَرَ إِلَى ٱلَّذِينَ يُزَكُّونَ أَنفُسَهُم ۚ بَلِ ٱللَّهُ يُزَكِّى مَن يَشَآءُ وَلَا يُظْلَمُونَ فَتِيلًا ﴿٤٩﴾

पवित्र गर्दछ र कसैमाथि सूत बराबर पनि अन्याय हुने छैन ।

أُنظُرْ كَيْفَ يَفْتَرُونَ عَلَى اللَّهِ الْكَذِبَ ۖ وَكَفَىٰ بِهِ إِثْمًا مُّبِينًا ﴿٥٠﴾

५०) हेर, यिनीहरू अल्लाह माथि कस्तो प्रकारले दोषारोपण गर्दछन् र यो क्रिया स्वयम् खुल्ला रूपमा पाप हुन प्रयाप्त छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِّنَ الْكِتَابِ يُؤْمِنُونَ بِالْجِبْتِ وَالطَّاغُوتِ وَيَقُولُونَ لِلَّذِينَ كَفَرُوا هَٰؤُلَاءِ أَهْدَىٰ مِنَ الَّذِينَ آمَنُوا سَبِيلًا ﴿٥١﴾

५१) के तिमीले तिनीहरूलाई देखेनौ जसलाई किताबको केही अंश दिइएको छ ? जसले मूर्ति र शैतानलाई मान्दछन् र काफिरहरूको पक्षमा बोल्छन् कि यिनीहरू मोमिनहरूको दाँजोमा बढी सही मार्गमा छन् ।

أُولَٰئِكَ الَّذِينَ لَعَنَهُمُ اللَّهُ ۖ وَمَن يَلْعَنِ اللَّهُ فَلَن تَجِدَ لَهُ نَصِيرًا ﴿٥٢﴾

५२) यी तिनै मानिसहरू हुन् जसमाथि अल्लाहको अभिशाप छ । र जसलाई अल्लाह अभिशप्त गऱ्यो, उसको कसैलाई पनि सहायता गर्नेवाला पाउने छैनौ ।

أَمْ لَهُمْ نَصِيبٌ مِّنَ الْمُلْكِ فَإِذًا لَّا يُؤْتُونَ النَّاسَ نَقِيرًا ﴿٥٣﴾

५३) के तिनीहरूको केही भाग राजकाजमा छ ? यदि त्यसो भए त तिनीहरूले कसैलाई खजूरको कोयाको खोटो जति पनि दिने छैनन् ।

أَمْ يَحْسُدُونَ النَّاسَ عَلَىٰ مَا آتَاهُمُ اللَّهُ مِن فَضْلِهِ ۖ فَقَدْ آتَيْنَا آلَ إِبْرَاهِيمَ الْكِتَابَ وَالْحِكْمَةَ وَآتَيْنَاهُم مُّلْكًا عَظِيمًا ﴿٥٤﴾

५४) अथवा अल्लाहले मानिसहरूलाई आफ्नो कृपाले जे प्रदान गरेको छ त्यसमाथि यिनीहरूले ईर्ष्या गर्दछन्, तर हामीले इब्राहीमको वंशजलाई अघि नै किताब र बुद्धि प्रदान गरेका थियौं र ठूलो राज्य-सत्ता पनि दिएका थियौं ।

५५) फेरि तिनीहरूमध्ये केहीले त किताबलाई माने तर, केहीले इन्कार गरेर टाढा नै रहे, र तिनीहरूलाई नर्कमा जली रहनु नै प्रयाप्त छ ।

فَمِنْهُم مَّنْ آمَنَ بِهِ وَمِنْهُم مَّن صَدَّ عَنْهُ ۚ وَكَفَىٰ بِجَهَنَّمَ سَعِيرًا ﴿٥٥﴾

५६) जुन मानिसहरूले हाम्रा आयतहरूलाई नकारेका छन्, तिनलाई हामीले निश्चय नै आगोमा हाल्ने छौं । जब जब तिनका छालाहरू पोलिसक्ने छन् । हामीले अर्कै छाला फेर्नेछौं जसले कि तिनीहरू सजायको स्वाद चाखिराखुन् । निःसन्देह अल्लाह सर्वशक्तिमान र बुद्धिमता सम्पन्न छ ।

إِنَّ الَّذِينَ كَفَرُوا بِآيَاتِنَا سَوْفَ نُصْلِيهِمْ نَارًا كُلَّمَا نَضِجَتْ جُلُودُهُم بَدَّلْنَاهُمْ جُلُودًا غَيْرَهَا لِيَذُوقُوا الْعَذَابَ ۗ إِنَّ اللَّهَ كَانَ عَزِيزًا حَكِيمًا ﴿٥٦﴾

५७) र जुन मानिसहरूले ईमान ल्याए र सत्कर्म गर्दछन्, तिनीहरूलाई हामीले चाँडै वहिश्तमा (स्वर्ग) प्रवेश गराउँछौ जसको धारामुनि नहरहरू बगिराखेका हुन्छन् । तिनीहरू त्यसमा सधैंका लागि बास पाउनेछन् । त्यहाँ तिनीहरूका लागि पवित्र स्वास्नीहरू हुने छिन् र हामीले तिनलाई छायाकुञ्ज र शीतल छहारीमा प्रवेश दिनेछौं ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَنُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ لَّهُمْ فِيهَا أَزْوَاجٌ مُّطَهَّرَةٌ ۖ وَنُدْخِلُهُمْ ظِلًّا ظَلِيلًا ﴿٥٧﴾

५८) अल्लाह तिमीलाई आदेश गर्दछ कि नासोवालाहरूलाई तिनको नासो पुऱ्याऊ र मानिसहरूको कुरोमा निर्णय गर्दा, न्यायपूर्ण ढंगले फैसला गर । निःसन्देह त्यो राम्रो कुरा हो जसको नसीहत अल्लाहले तिमीलाई

إِنَّ اللَّهَ يَأْمُرُكُمْ أَن تُؤَدُّوا الْأَمَانَاتِ إِلَىٰ أَهْلِهَا وَإِذَا حَكَمْتُم بَيْنَ النَّاسِ أَن تَحْكُمُوا بِالْعَدْلِ ۚ إِنَّ اللَّهَ نِعِمَّا يَعِظُكُم بِهِ ۗ إِنَّ اللَّهَ كَانَ سَمِيعًا بَصِيرًا ﴿٥٨﴾

गर्दैछ । निःसन्देह अल्लाह सबै कुरा सुन्दछ र सबै देख्दछ ।

يَاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ وَاُولِي الْاَمْرِ مِنْكُمْ ۚ فَاِنْ تَنَازَعْتُمْ فِيْ شَيْءٍ فَرُدُّوْهُ اِلَى اللّٰهِ وَالرَّسُوْلِ اِنْ كُنْتُمْ تُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ۗ ذٰلِكَ خَيْرٌ وَّاَحْسَنُ تَاْوِيْلًا ﴿٥٩﴾

५९) हे मोमिनहरू ! अल्लाहको आदेश पालन गर र उसका रसूल(स.)का आदेशहरूको पालन गर र तिमीहरूमध्ये अधिकार भएकाहरूको । फेरि यदि तिमीहरूमा आपसी मतभेद भएको अवस्थामा, यदि तिमी अल्लाह र आखिरतको दिनमाथि ईमान राख्दछौ भने त्यस कुरालाई अल्लाह र त्यसका रसूल(स.) तिर फर्काइ देऊ । यो साह्रै राम्रो कुरा हो र यसको परिणाम पनि राम्रो हुन्छ ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ يَزْعُمُوْنَ اَنَّهُمْ اٰمَنُوْا بِمَآ اُنْزِلَ اِلَيْكَ وَمَآ اُنْزِلَ مِنْ قَبْلِكَ يُرِيْدُوْنَ اَنْ يَّتَحَاكَمُوْٓا اِلَى الطَّاغُوْتِ وَقَدْ اُمِرُوْٓا اَنْ يَّكْفُرُوْا بِهٖ ۗ وَيُرِيْدُ الشَّيْطٰنُ اَنْ يُّضِلَّهُمْ ضَلٰلًاۢ بَعِيْدًا ﴿٦٠﴾

६०) के तपाईले तिनीहरूलाई देखनु भएन ? जसले दाबी त गर्दछन् कि जुन (ग्रन्थहरू) तपाईलाई प्रदान गरिएको छ र जुन ग्रन्थहरू तपाईभन्दा पहिला उतारिएका थिए ती सबैमा तिनले ईमान राख्दछन् तर वास्तवमा तिनीहरूले आफ्ना विवादका कुराहरू निसाफको लागि अल्लाह बाहेक अन्य तिर लग्न चाहन्छन्, जबकि तिनलाई आदेश गरिएको थियो कि शैतानलाई विश्वास नगरुन् र शैतानले चाहन्छ कि तिनलाई सही मार्गबाट विचलित गराइहालोस् ।

وَاِذَا قِيْلَ لَهُمْ تَعَالَوْا اِلٰى مَآ اَنْزَلَ اللّٰهُ وَاِلَى

६१) र जब तिनीहरूलाई भन्निछ कि

الرَّسُوْلِ رَأَيْتَ الْمُنٰفِقِيْنَ يَصُدُّوْنَ عَنْكَ صُدُوْدًا ﴿٦١﴾

अल्लाहले जे आदेश गरेको छ त्यतातिर र पैगम्बर (स.) तिर लाग, त तिमीले देख्ने छौ कि मुनाफिकहरूले आफ्ना मुख फर्काई अर्कै तिर लाग्दछन् ।

فَكَيْفَ إِذَآ أَصَابَتْهُمْ مُّصِيْبَةٌۢ بِمَا قَدَّمَتْ أَيْدِيْهِمْ ثُمَّ جَآءُوْكَ يَحْلِفُوْنَ ۖ بِاللّٰهِ إِنْ أَرَدْنَآ إِلَّآ إِحْسَانًا وَّتَوْفِيْقًا ﴿٦٢﴾

६२) तसर्थ यो कस्तो कुरा हो कि तिनीहरू माथि कुनै प्रकारको विपत्ति आइपरे पछि तिनीहरूले तपाई समक्ष आएर अल्लाहको शपथ खान्छन् कि हाम्रो उद्देश्य त सौहार्द र सम्झौता बाहेक अरु केही थिएन ।

أُولٰٓئِكَ الَّذِيْنَ يَعْلَمُ اللّٰهُ مَا فِيْ قُلُوْبِهِمْ ۗ فَأَعْرِضْ عَنْهُمْ وَعِظْهُمْ وَقُلْ لَّهُمْ فِيْٓ أَنْفُسِهِمْ قَوْلًاۢ بَلِيْغًا ﴿٦٣﴾

६३) यी ती मानिस हुन् कि तिनका हृदयहरूमा जे जति छ, त्यो सबै अल्लाह राम्ररी जान्दछ । तपाईले तिनीहरूलाई नदेखे जस्तो गर्नुस् र तिनलाई नसीहत दिदै गर्नुस् र यस्ता कुरा भन्नुस् जसले कि तिनका हृदयमा प्रभाव पारोस् ।

وَمَآ أَرْسَلْنَا مِنْ رَّسُوْلٍ إِلَّا لِيُطَاعَ بِإِذْنِ اللّٰهِ ۚ وَلَوْ أَنَّهُمْ إِذْ ظَّلَمُوْٓا أَنْفُسَهُمْ جَآءُوْكَ فَاسْتَغْفَرُوا اللّٰهَ وَاسْتَغْفَرَ لَهُمُ الرَّسُوْلُ لَوَجَدُوا اللّٰهَ تَوَّابًا رَّحِيْمًا ﴿٦٤﴾

६४) हामीले प्रत्येक रसूललाई यसकारणले पठायौं कि अल्लाहको आज्ञा अनुसार उसको आज्ञा पालन गरियोस् । तिनीहरूले जब आफूप्रति नै अन्याय गरिरहेका थिए, तपाईतिर आएर पश्चाताप गरेको भए र अल्लाहसँग क्षमा याचना गरेको भए र रसूलले पनि तिनीहरूको निम्ति माफीको याचना गरेको भए, अल्लाहलाई क्षमादाता र अत्यन्त दयालु पाउने थिए ।

فَلَا وَرَبِّكَ لَا يُؤْمِنُونَ حَتَّىٰ يُحَكِّمُوكَ فِيمَا
شَجَرَ بَيْنَهُمْ ثُمَّ لَا يَجِدُوا فِي أَنفُسِهِمْ حَرَجًا مِّمَّا
قَضَيْتَ وَيُسَلِّمُوا تَسْلِيمًا ﴿٦٥﴾

६५) यसर्थ तिम्रो रबको शपथ लिन्छु कि, यिनीहरू जबसम्म आफ्ना सम्पूर्ण विवादमा तपाईलाई इन्साफकर्ता स्वीकार गर्दैनन् र तपाईले गरेको निर्णयप्रति हृदयमा कुनै संकुचित विचार नराखी प्रसन्नतापूर्वक त्यसलाई अंगिकार गर्दैनन्, तबसम्म मोमिन हुन सक्दैनन् ।

وَلَوْ أَنَّا كَتَبْنَا عَلَيْهِمْ أَنِ اقْتُلُوا أَنفُسَكُمْ أَوِ
اخْرُجُوا مِن دِيَارِكُم مَّا فَعَلُوهُ إِلَّا قَلِيلٌ
مِّنْهُمْ ۖ وَلَوْ أَنَّهُمْ فَعَلُوا مَا يُوعَظُونَ بِهِ لَكَانَ
خَيْرًا لَّهُمْ وَأَشَدَّ تَثْبِيتًا ﴿٦٦﴾

६६) र यदि हामीले तिनीहरूलाई आफ्नो जीवनको बलि दिन अथवा आफ्नो घर छोड्न आदेश दिएको भए तिनीहरूमध्ये केहीले मात्र त्यस्तो गर्ने थिए । तर यदि तिनीहरूले त्यो आदेश जुनकि तिनीहरूलाई दिइएको थियो पालन गरेको भए तिनीहरूको निम्ति यही सर्वोत्तम हुने थियो र तिनीहरूको लागि धेरै धेरै सघाउ पुग्ने थियो ।

وَإِذًا لَّآتَيْنَاهُم مِّن لَّدُنَّا أَجْرًا عَظِيمًا ﴿٦٧﴾

६७) र तब त हामीले आफ्नो तर्फबाट तिनीहरूलाई ठूलो पुरस्कार दिने थियौं ।

وَلَهَدَيْنَاهُمْ صِرَاطًا مُّسْتَقِيمًا ﴿٦٨﴾

६८) र निःसन्देह सही बाटो पनि देखाउने थियौं ।

وَمَن يُطِعِ اللَّهَ وَالرَّسُولَ فَأُولَٰئِكَ مَعَ الَّذِينَ
أَنْعَمَ اللَّهُ عَلَيْهِم مِّنَ النَّبِيِّينَ وَالصِّدِّيقِينَ
وَالشُّهَدَاءِ وَالصَّالِحِينَ ۚ وَحَسُنَ أُولَٰئِكَ رَفِيقًا ﴿٦٩﴾

६९) जुन मानिसहरू अल्लाह र उसको रसूल(स.)को आज्ञापालन गर्दछन्, तिनीहरू ती मानिसहरूको साथमा हुनेछन् जसलाई कि अल्लाहले पुरस्कृत गरेको छ । उदाहरणको लागि नबी र सत्य-निष्ठ र शहीद

र सत्यकर्मीहरू । यिनीहरू सर्वोतम साथी हुन् ।

७०) यो अल्लाहको दानशीलता हो ! र यो पर्याप्त छ कि अल्लाह सबै कुराको ज्ञाता छ ।

ذٰلِكَ الْفَضْلُ مِنَ اللّٰهِ ۭ وَكَفٰى بِاللّٰهِ عَلِيْمًا ۝

७१) हे मोमिनहरू ! आफ्नो रक्षाको साधन लिइहाल, अनि त्यसपछि समूह-समूहमा प्रस्थान गर अथवा सबै एकै साथमा निस्की हाल ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا خُذُوْا حِذْرَكُمْ فَانْفِرُوْا ثُبَاتٍ اَوِ انْفِرُوْا جَمِيْعًا ۝

७२) र निश्चयनै तिमीमध्ये कोही यस्तो पनि छ जो जाउँ कि नजाउँ जस्तो गर्दछ, फेरि यदि तिमीमाथि कुनै कष्ट आइपर्दछ भने भन्दछ कि अल्लाहले म माथि ठूलो कृपा गरेको छ कि म तिनीहरूको साथमा उपस्थित थिएन ।

وَاِنَّ مِنْكُمْ لَمَنْ لَّيُبَطِّئَنَّ ۚ فَاِنْ اَصَابَتْكُمْ مُّصِيْبَةٌ قَالَ قَدْ اَنْعَمَ اللّٰهُ عَلَيَّ اِذْ لَمْ اَكُنْ مَّعَهُمْ شَهِيْدًا ۝

७३) र यदि अल्लाह तिमीमाथि कृपा गर्दछ भने यस्तो भन्दछ कि उनको र तिम्रो कुनै मित्रता नै थिएन, पश्चाताप गर्दै भन्दछ कि यदि म पनि तिनीहरूको साथमा गएको भए ठूलो सफलता प्राप्त हुने थियो ।

وَلَىِٕنْ اَصَابَكُمْ فَضْلٌ مِّنَ اللّٰهِ لَيَقُوْلَنَّ كَاَنْ لَّمْ تَكُنْۢ بَيْنَكُمْ وَبَيْنَهٗ مَوَدَّةٌ يّٰلَيْتَنِيْ كُنْتُ مَعَهُمْ فَاَفُوْزَ فَوْزًا عَظِيْمًا ۝

७४) तसर्थ जसले संसारिक जीवनलाई आखिरतको जीवनका लागि बेचेका छन्, तिनीहरूलाई आवश्यक छ कि अल्लाहको मार्गमा युद्ध गरुन् र जो मानिस अल्लाहको मार्गमा युद्ध गर्दै शहीद हुन्छ अथवा विजयी हुन्छ निश्चय नै हामीले उसलाई

فَلْيُقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ الَّذِيْنَ يَشْرُوْنَ الْحَيٰوةَ الدُّنْيَا بِالْاٰخِرَةِ ۭ وَمَنْ يُّقَاتِلْ فِيْ سَبِيْلِ اللّٰهِ فَيُقْتَلْ اَوْ يَغْلِبْ فَسَوْفَ نُؤْتِيْهِ اَجْرًا عَظِيْمًا ۝

बहुमूल्य पुरस्कार प्रदान गर्ने छौं ।

७५) आखिर के कारण छ कि अल्लाहको मार्गमा, ती नि:सहाय लोग्ने मानिसहरू, र स्वास्नी मानिसहरू र बच्चाहरू मुक्त गराउनका लागि तिमी युद्ध गर्दैनौ ? जसले प्रार्थना गर्ने गर्दछन् कि हे रब ! हामीलाई अत्याचारीहरूको शहरबाट निकालिहाल र हाम्रो निम्ति आफ्ना विशेष रक्षक नियुक्त गर र हाम्रो निम्ति खास आफ्नैतर्फबाट सहयोगी बनाऊ ।

وَمَا لَكُمْ لَا تُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ وَالْمُسْتَضْعَفِينَ مِنَ الرِّجَالِ وَالنِّسَاءِ وَالْوِلْدَانِ الَّذِينَ يَقُولُونَ رَبَّنَا أَخْرِجْنَا مِنْ هَٰذِهِ الْقَرْيَةِ الظَّالِمِ أَهْلُهَا وَاجْعَلْ لَنَا مِنْ لَدُنْكَ وَلِيًّا وَاجْعَلْ لَنَا مِنْ لَدُنْكَ نَصِيرًا ﴿٧٥﴾

७६) जुन मानिसहरूले ईमान ल्याएका छन् तिनीहरूले अल्लाहको मार्गमा युद्ध गर्दछन् र जो काफिर छन् तिनीहरूले अल्लाह बाहेक अरुको मार्गमा युद्ध गर्दछन् । तसर्थ तिमीहरू शैतानका सहयोगीहरूको विरुद्ध युद्ध गर, विश्वास गर कि शैतानको षड्यन्त्र अति कमजोर छ ।

الَّذِينَ آمَنُوا يُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ ۖ وَالَّذِينَ كَفَرُوا يُقَاتِلُونَ فِي سَبِيلِ الطَّاغُوتِ فَقَاتِلُوا أَوْلِيَاءَ الشَّيْطَانِ ۖ إِنَّ كَيْدَ الشَّيْطَانِ كَانَ ضَعِيفًا ﴿٧٦﴾

७७) के तिमीले तिनीहरूलाई देखेनौ जसलाई आदेश भएको थियो कि आफ्ना हात धर्मयुद्धबाट रोक र नमाज़ पढ्दै र जकात दिंदै गर । पछि जब धर्मयुद्ध गर्ने आदेश जारी गरियो त तिनीहरूमध्ये एउटा समूह मानिसहरूसंग यस्तो तर्सन थाले जस्तो कि अल्लाहको डर हो बरु त्यो भन्दा पनि बढ्ता र भन्न थाले

أَلَمْ تَرَ إِلَى الَّذِينَ قِيلَ لَهُمْ كُفُّوا أَيْدِيَكُمْ وَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ فَلَمَّا كُتِبَ عَلَيْهِمُ الْقِتَالُ إِذَا فَرِيقٌ مِنْهُمْ يَخْشَوْنَ النَّاسَ كَخَشْيَةِ اللَّهِ أَوْ أَشَدَّ خَشْيَةً ۚ وَقَالُوا رَبَّنَا لِمَ كَتَبْتَ عَلَيْنَا الْقِتَالَ لَوْلَا أَخَّرْتَنَا إِلَىٰ أَجَلٍ قَرِيبٍ ۗ قُلْ مَتَاعُ الدُّنْيَا قَلِيلٌ وَالْآخِرَةُ خَيْرٌ لِمَنِ اتَّقَىٰ وَلَا تُظْلَمُونَ فَتِيلًا ﴿٧٧﴾

कि हे हाम्रो अल्लाह तिमीले हामी माथि जिहाद किन अनिवार्य गरिहाल्यौ ? केही समय अझै हामीलाई हाम्रो जीवन जिउन किन दिएनौ ? (हे पैगम्बर ! तिनीहरूसित) भनि दिनुस् कि संसारको लाभ बहुतै कम छ र परहेजगारको निम्ति त सबभन्दा राम्रो कुरा आखिरत नै हो र तिमीमाथि एउटा धागो जतिको पनि अन्याय गरिने छैन ।

أَيْنَ مَا تَكُونُوا يُدْرِككُّمُ الْمَوْتُ وَلَوْ كُنتُمْ فِي بُرُوجٍ مُّشَيَّدَةٍ ۗ وَإِن تُصِبْهُمْ حَسَنَةٌ يَقُولُوا هَٰذِهِ مِنْ عِندِ اللَّهِ ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ يَقُولُوا هَٰذِهِ مِنْ عِندِكَ ۚ قُلْ كُلٌّ مِّنْ عِندِ اللَّهِ ۖ فَمَالِ هَٰؤُلَاءِ الْقَوْمِ لَا يَكَادُونَ يَفْقَهُونَ حَدِيثًا ﴿٧٨﴾

७८) तिमी जुन ठाउँमा भए पनि मृत्यु आएर तिमीलाई समाती हाल्छ, चाहे तिमी बलियो किल्लामा नै किन नबस । यदि तिनीहरूलाई कुनै फाइदाजनक कुरा प्राप्त हुन्छ भने भन्दछन् कि यो अल्लाहको तर्फबाट हो र यदि कुनै कष्ट पुग्दछ भने पुकारीहाल्छन् कि यो तिम्रो कारणले हो । भनिदेऊ कि सबै अल्लाहको तर्फबाट नै हो । यिनीहरूलाई के भएको छ कि कुनै कुरा बुझ्ने नजिक पनि छैनन् ।

مَّا أَصَابَكَ مِنْ حَسَنَةٍ فَمِنَ اللَّهِ ۖ وَمَا أَصَابَكَ مِن سَيِّئَةٍ فَمِن نَّفْسِكَ ۚ وَأَرْسَلْنَاكَ لِلنَّاسِ رَسُولًا ۚ وَكَفَىٰ بِاللَّهِ شَهِيدًا ﴿٧٩﴾

७९) तिमीलाई जुन भलाई प्राप्त हुन्छ, त्यो अल्लाहबाटै हो र जे नराम्रो हुन्छ त्यो तिम्रै आफ्नै कारणले आउँछ । हामीले तपाईलाई सबै मानिसहरू सम्म सन्देश पुऱ्याउनका लागि पैगम्बरको रूपमा पठाएका छौं र (यस कुराको) साक्षी अल्लाह नै पर्याप्त छ ।

مَنْ يُطِعِ الرَّسُولَ فَقَدْ أَطَاعَ اللَّهَ ۖ وَمَنْ تَوَلَّىٰ فَمَا أَرْسَلْنَاكَ عَلَيْهِمْ حَفِيظًا ﴿٨٠﴾

८०) जुन मानिसले रसूल(स.)को आज्ञा पालन गर्दछ, उसैले अल्लाहको आज्ञा पालन गरे सरह मानिन्छ र जसले आज्ञा उल्लंघन गर्दछन् र विमुख हुन्छन् हे पैगम्बर(स.) ! तपाईलाई यिनीहरू माथि रक्षक बनाई पठाइएको छैन ।

وَيَقُولُونَ طَاعَةٌ فَإِذَا بَرَزُوا مِنْ عِنْدِكَ بَيَّتَ طَائِفَةٌ مِنْهُمْ غَيْرَ الَّذِي تَقُولُ ۖ وَاللَّهُ يَكْتُبُ مَا يُبَيِّتُونَ ۖ فَأَعْرِضْ عَنْهُمْ وَتَوَكَّلْ عَلَى اللَّهِ ۚ وَكَفَىٰ بِاللَّهِ وَكِيلًا ﴿٨١﴾

८१) यी मानिसहरू मुखले त भन्दछन् कि (तपाईको) आज्ञाकारी हौं, तर तपाईबाट अलग भएर गइसकेपछि तिनीहरूमध्ये एक समूहले रातिमा तपाईको कुराको विरोधमा सरसल्लाह गर्दछन् । र अल्लाहले उनीहरूको रातीका कुराहरू लेखि राखेको छ । तसर्थ यिनीहरूको वास्ता नगर्नुस् र अल्लाहमाथि भरोसा गर्नु र अल्लाह नै सबै काम पुरा गर्न सक्षम छ ।

أَفَلَا يَتَدَبَّرُونَ الْقُرْآنَ ۚ وَلَوْ كَانَ مِنْ عِنْدِ غَيْرِ اللَّهِ لَوَجَدُوا فِيهِ اخْتِلَافًا كَثِيرًا ﴿٨٢﴾

८२) के यिनीहरू कुरआनमा चिन्तन-मनन् गर्दैनन् ? यदि यो अल्लाह बाहेक अरु कसैको तर्फबाट भएको भए त्यसमा निःसन्देह (धेरै) विरोधाभाषपूर्ण कुराहरू पाउने थिए ।

وَإِذَا جَاءَهُمْ أَمْرٌ مِنَ الْأَمْنِ أَوِ الْخَوْفِ أَذَاعُوا بِهِ ۖ وَلَوْ رَدُّوهُ إِلَى الرَّسُولِ وَإِلَىٰ أُولِي الْأَمْرِ مِنْهُمْ لَعَلِمَهُ الَّذِينَ يَسْتَنْبِطُونَهُ مِنْهُمْ ۗ وَلَوْلَا فَضْلُ اللَّهِ عَلَيْكُمْ وَرَحْمَتُهُ لَاتَّبَعْتُمُ الشَّيْطَانَ إِلَّا قَلِيلًا ﴿٨٣﴾

८३) जब तिनीहरू कहाँ अमन वा भयको कुनै समाचार आउँछ भने त्यसलाई प्रसारित गर्न थाल्छन् जब कि त्यो समाचारलाई पैगम्बर (स.) र आफ्ना बुद्धिजीविहरू कहाँ

सुम्पेको भए त उनीहरूले परिणाम निकालिएको कुराको तथ्य थाहा पाउँदथे । र यदि तिमीमाथि अल्लाहको कृपा र दया नभएको भए त केही बाहेक सबै शैतानका अनुयायी हुने थिए ।

فَقَاتِلْ فِي سَبِيلِ اللَّهِ لَا تُكَلَّفُ إِلَّا نَفْسَكَ
وَحَرِّضِ الْمُؤْمِنِينَ ۖ عَسَى اللَّهُ أَن يَكُفَّ بَأْسَ
الَّذِينَ كَفَرُوا ۚ وَاللَّهُ أَشَدُّ بَأْسًا وَأَشَدُّ تَنكِيلًا ﴿٨٤﴾

८४) तसर्थ (हे मोहम्मद स. !) तपाई अल्लाहको मार्गमा धर्मयुद्ध गर्नुस् । तपाई उपर आफू बाहेक अरु कसैको जिम्मेवारी छैन र मोमिनहरूलाई पनि प्रोत्साहित गर्ने गर्नु । सम्भव छ कि निकट भविष्यमै अल्लाहले काफिरहरूको युद्ध रोकी देओस् र अल्लाह सर्वशक्ति सम्पन्न र कठोर सजाय दिनेवाला छ ।

مَّن يَشْفَعْ شَفَاعَةً حَسَنَةً يَكُن لَّهُ نَصِيبٌ مِّنْهَا ۖ
وَمَن يَشْفَعْ شَفَاعَةً سَيِّئَةً يَكُن لَّهُ كِفْلٌ مِّنْهَا ۗ وَكَانَ
اللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ مُّقِيتًا ﴿٨٥﴾

८५) जुन व्यक्तिले असल कामको लागि सिफारिश गर्दछ, उसले पनि त्यसबाट केही भाग प्राप्त गर्नेछ र जसले नराम्रा कुराको सिफारिश गर्नेछ उसले त्यसको केही अंश पाउनु पर्नेछ । र अल्लाह प्रत्येक कुरो माथि सर्वशक्ति सम्पन्न छ ।

وَإِذَا حُيِّيتُم بِتَحِيَّةٍ فَحَيُّوا بِأَحْسَنَ مِنْهَا
أَوْ رُدُّوهَا ۗ إِنَّ اللَّهَ كَانَ عَلَىٰ كُلِّ شَيْءٍ حَسِيبًا ﴿٨٦﴾

८६) र जब कुनै व्यक्तिले तिमीलाई सलाम गरोस् त तिमीले पनि त्यो भन्दा राम्रो शब्दमा जवाफ देऊ वा तिनै शब्दमा सलाम फर्काऊ । निःसन्देह अल्लाह सबै हिसाब गर्नेवाला छ ।

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ۭ لَيَجْمَعَنَّكُمْ اِلٰى يَوْمِ الْقِيٰمَةِ لَا رَيْبَ فِيْهِ ۭ وَمَنْ اَصْدَقُ مِنَ اللّٰهِ حَدِيْثًا ﴿٨٧﴾

८७) अल्लाह त्यो वास्तविक रब हो जस बाहेक अरु कोही पूजा योग्य छैन । उसले निःसन्देह कियामतको दिन तिमी सबैलाई एकत्रित गर्नेछ जसको आउनुमा कुनै शंका छैन । र अल्लाह भन्दा बढी सच्चा को छ ?

فَمَا لَكُمْ فِي الْمُنٰفِقِيْنَ فِئَتَيْنِ وَاللّٰهُ اَرْكَسَهُمْ بِمَا كَسَبُوْا ۭ اَتُرِيْدُوْنَ اَنْ تَهْدُوْا مَنْ اَضَلَّ اللّٰهُ ۭ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَلَنْ تَجِدَ لَهٗ سَبِيْلًا ﴿٨٨﴾

८८) तिमीहरूलाई के भएको छ कि तिमी मुनाफिकहरूको सम्बन्धमा दुई समूहमा विभाजित भई रहेका छौ । अल्लाहले तिनीहरूलाई तिनकै क्रियाकलापले गर्दा तिरस्कृत गरिहालेको छ । के तिमीहरूले अब यो योजना बनाउँदै छौ कि जसलाई अल्लाहले वास्तविक बाटोबाट टाढा फ्याँकिसकेको छ उसलाई तिमीहरूले सही बाटोमा ल्याउने छौ ? जसलाई अल्लाहले मार्गभ्रष्ट गरिसक्यो त्यसलाई तिमीले कहिल्यै सही बाटोमा ल्याउन सक्दैनौ ।

وَدُّوْا لَوْ تَكْفُرُوْنَ كَمَا كَفَرُوْا فَتَكُوْنُوْنَ سَوَاۗءً فَلَا تَتَّخِذُوْا مِنْهُمْ اَوْلِيَاۗءَ حَتّٰي يُهَاجِرُوْا فِيْ سَبِيْلِ اللّٰهِ ۭ فَاِنْ تَوَلَّوْا فَخُذُوْهُمْ وَاقْتُلُوْهُمْ حَيْثُ وَجَدْتُّمُوْهُمْ ۠ وَلَا تَتَّخِذُوْا مِنْهُمْ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿٨٩﴾

८९) तिनीहरूले त यो चाहन्छन् कि जुन प्रकारले तिनीहरू आफै काफिर छन्, त्यस्तै तिमी पनि अवज्ञाकारी भई सबै एकनास भइहाल, तसर्थ जबसम्म अल्लाहको मार्गमा यिनीहरू प्रवास (हिजरत) गर्दैनन तबसम्म तिनीहरूमध्ये कसैलाई वास्तविक मित्र नबनाउनु । फेरि विरोधी भएपछि जहाँ फेला पर्छन्, समातेर मारिहाल र तिनीहरूमध्ये कसैलाई आफ्नो हितैषी र साथी नबनाऊ ।

إِلَّا الَّذِينَ يَصِلُونَ إِلَىٰ قَوْمٍ بَيْنَكُمْ وَبَيْنَهُم مِّيثَاقٌ أَوْ جَاءُوكُمْ حَصِرَتْ صُدُورُهُمْ أَن يُقَاتِلُوكُمْ أَوْ يُقَاتِلُوا قَوْمَهُمْ ۚ وَلَوْ شَاءَ اللَّهُ لَسَلَّطَهُمْ عَلَيْكُمْ فَلَقَاتَلُوكُمْ ۚ فَإِنِ اعْتَزَلُوكُمْ فَلَمْ يُقَاتِلُوكُمْ وَأَلْقَوْا إِلَيْكُمُ السَّلَمَ فَمَا جَعَلَ اللَّهُ لَكُمْ عَلَيْهِمْ سَبِيلًا ﴿٩٠﴾

९०) तर ती मानिसहरू बाहेक जसले कि यस्तो समूहसँग जसको र तिम्रो बीचमा सम्झौता भइसकेको छ, अथवा तिनिहरू तिमीनिर यसरी आएका छन् कि तिनीहरूका हृदय तिमीसँग अथवा आफ्नो समूहसँग युद्ध गर्न सक्दैनन् र यदि अल्लाहले चाहेको भए तिनीहरूले तिमी माथि वर्चस्व राख्न सक्दथे र तिनीहरूले अवश्य नै युद्ध गर्दथे । तसर्थ यदि तिनीहरूले तिमीसँग युद्ध गर्नबाट पन्छिन्छन् र तिमी कहाँ (शान्ति) सम्झौताको सन्देश पठाउँछन् भने अल्लाहले तिम्रो निम्ति तिनीहरूसँग युद्ध गर्न कुनै बाटो खोलेको छैन ।

سَتَجِدُونَ آخَرِينَ يُرِيدُونَ أَن يَأْمَنُوكُمْ وَيَأْمَنُوا قَوْمَهُمْ كُلَّ مَا رُدُّوا إِلَى الْفِتْنَةِ أُرْكِسُوا فِيهَا ۚ فَإِن لَّمْ يَعْتَزِلُوكُمْ وَيُلْقُوا إِلَيْكُمُ السَّلَمَ وَيَكُفُّوا أَيْدِيَهُمْ فَخُذُوهُمْ وَاقْتُلُوهُمْ حَيْثُ ثَقِفْتُمُوهُمْ ۚ وَأُولَٰئِكُمْ جَعَلْنَا لَكُمْ عَلَيْهِمْ سُلْطَانًا مُّبِينًا ﴿٩١﴾

९१) तिमीले केही अन्य यस्ता मानिसहरू पनि पाउने छौ जो चाहन्छन् कि तिमीसित पनि शान्तिपूर्वक रहुन् र आफ्नो कौममा पनि सुरक्षित रहुन् तर जब दंगा फसाद उत्पन्न गर्न बोलाइन्छन् त त्यसमा आकृष्ट भई सक्रिय भइहाल्छन् । तसर्थ यस्ता मानिसहहरू यदि तिमीसित संयम नअपनाई तिमीतिर शान्तिका लागि संवाद गर्दैनन् र आफ्ना हातलाई रोक्दैनन् भने जहाँ पाए पनि तिनलाई समातेर मार । यी तिनै हुन् जसमाथि हामीले तिम्रो अधिपत्य (वर्चस्व) निश्चित गरेका छौं ।

وَمَا كَانَ لِمُؤْمِنٍ اَنْ يَّقْتُلَ مُؤْمِنًا اِلَّا خَطَـًٔا ۚ وَمَنْ قَتَلَ مُؤْمِنًا خَطَـًٔا فَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ وَّدِيَةٌ مُّسَلَّمَةٌ اِلٰٓى اَهْلِهٖٓ اِلَّآ اَنْ يَّصَّدَّقُوْا ۗ فَاِنْ كَانَ مِنْ قَوْمٍ عَدُوٍّ لَّكُمْ وَهُوَ مُؤْمِنٌ فَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ۗ وَاِنْ كَانَ مِنْ قَوْمٍۢ بَيْنَكُمْ وَبَيْنَهُمْ مِّيْثَاقٌ فَدِيَةٌ مُّسَلَّمَةٌ اِلٰٓى اَهْلِهٖ وَتَحْرِيْرُ رَقَبَةٍ مُّؤْمِنَةٍ ۚ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ ۖ تَوْبَةً مِّنَ اللّٰهِ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿٩٢﴾

९२) कुनै मोमिनले अर्को मोमिनलाई मार्नु कुनै अवस्थामा पनि उचित छैन, तर गल्तीबाट मारिहालेको छ भने अर्को कुरा हो र कसैले भूलबाट मार्दछ भने अल्लाहको आदेश छ कि त्यसले एउटा मुसलमान दासलाई मुक्त गरोस् र साथै मृतकका उत्तराधिकारीहरूलाई रगत बगाए बापतको क्षतिपूर्ति रकम दिइयोस् । तर हो, यदि तिनीहरूले माफ गरिदिन्छन् भने यो उनीहरूको आफ्नो इच्छाको कुरो हो । यदि मारिएको मानिस तिम्रा शत्रुको समूहको छ र त्यो स्वयं मोमिन छ भने एउटा मुसलमान गुलामलाई मुक्त गर्नुपर्दछ र यदि मारिएको व्यक्ति यस्ता मानिसहरूमध्येको छ जोसँग तिम्रो कुनै मैत्रि सन्धि छ भने उसको उत्तराधिकारीहरूलाई रगतको क्षतिपूर्ति रकमका साथै एउटा मुसलमान दासलाई मुक्त गर्नुपर्छ । अतः जसलाई साधन र क्षमता छैन, तिनीहरूले अनवरत रूपले दुई महिनाको व्रत बस्नु पर्छ । यो पश्चाताप अल्लाहबाट माफी पाउनका लागि हो र अल्लाह सर्वज्ञानी र बडो बुद्धिमता सम्पन्न छ ।

وَمَنْ يَّقْتُلْ مُؤْمِنًا مُّتَعَمِّدًا فَجَزَاۤؤُهٗ جَهَنَّمُ خَالِدًا فِيْهَا وَغَضِبَ اللّٰهُ عَلَيْهِ وَلَعَنَهٗ وَاَعَدَّ لَهٗ عَذَابًا عَظِيْمًا ﴿٩٣﴾

९३) यदि कुनै मानिस जानी बुझिकन कुनै मुसलमानलाई मारिदिन्छ भने

उसको सजाय नर्क हो । जहाँ ऊ सधैं बास पाउने छ र अल्लाहको क्रोध र अभिशापको पात्र हुनेछ र यस्तो मानिसको लागि उसले कठोर सजाय तयार राखेको छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا ضَرَبْتُمْ فِي سَبِيلِ اللَّهِ فَتَبَيَّنُوا وَلَا تَقُولُوا لِمَنْ أَلْقَىٰ إِلَيْكُمُ السَّلَامَ لَسْتَ مُؤْمِنًا تَبْتَغُونَ عَرَضَ الْحَيَاةِ الدُّنْيَا فَعِندَ اللَّهِ مَغَانِمُ كَثِيرَةٌ ۚ كَذَٰلِكَ كُنتُم مِّن قَبْلُ فَمَنَّ اللَّهُ عَلَيْكُمْ فَتَبَيَّنُوا ۚ إِنَّ اللَّهَ كَانَ بِمَا تَعْمَلُونَ خَبِيرًا ﴿٩٤﴾

९४) हे मोमिनहरू ! जब तिमी अल्लाहको मार्गमा (जिहादको लागि) जान्छौ त बडो छानविनले काम गर्ने गर र जुन मानिसले तिमीसित अस्सालमुअलैकुम भन्दछ उसलाई तिमी मोमिन होइनौ भनि नभन । र, जसबाट तिम्रो उद्देश्य सांसारिक लाभ प्राप्त गर्नु छ भने अल्लाहसित यस्ता फाइदाका सामग्रीहरू थुप्रै छन् । तिमी पनि त पहिला यस्तै थियौ र पछि अल्लाहले तिमीमाथि आफ्नो कृपा गर्‍यो । तसर्थ तिमी राम्ररी छानबिन गर्ने गर । निःसन्देह जुन कर्महरू तिमीले गर्दछौ, सबै अल्लाहलाई थाहा छ ।

لَّا يَسْتَوِي الْقَاعِدُونَ مِنَ الْمُؤْمِنِينَ غَيْرُ أُولِي الضَّرَرِ وَالْمُجَاهِدُونَ فِي سَبِيلِ اللَّهِ بِأَمْوَالِهِمْ وَأَنفُسِهِمْ ۚ فَضَّلَ اللَّهُ الْمُجَاهِدِينَ بِأَمْوَالِهِمْ وَأَنفُسِهِمْ عَلَى الْقَاعِدِينَ دَرَجَةً ۚ وَكُلًّا وَعَدَ اللَّهُ الْحُسْنَىٰ ۚ وَفَضَّلَ اللَّهُ الْمُجَاهِدِينَ عَلَى الْقَاعِدِينَ أَجْرًا عَظِيمًا ﴿٩٥﴾

९५) अल्लाहको मार्गमा आफ्ना सम्पत्ति र ज्यानले युद्ध गर्ने मोमिन र बिना उचित कारण बसिरहने मोमिन एक समान हुन सक्दैनन् । अल्लाहले, आफ्ना ज्यान र मालसित युद्ध गर्ने मोमिनलाई त्यसै बसिराख्ने माथि धेरै श्रेष्ठता प्रदान गरेको छ, यद्यपि अल्लाहले सबै मोमिनलाई राम्रो स्थानको वचन दिएको छ तर ठूलो पुरस्कारको दृष्टिकोणले, अल्लाहले

जिहाद गर्नेहरूलाई, बसिराख्ने माथि महानता प्रदान गरेको छ ।

९६) (अर्थात) आफ्नो तर्फबाट प्रदान गरिएका दर्जा पनि, पुरस्कार पनि र कृपा पनि छ र अल्लाह क्षमादाता दयालु छ ।

دَرَجٰتٍ مِّنْهُ وَمَغْفِرَةً وَّرَحْمَةً ۭ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ۝٩٦

९७) जुन मानिस आफू माथि अत्याचार गर्नेवाला छन्, जब तिनका प्राण निकाल्ने बेलामा फरिश्ताहरूले सोध्छन् तिमी कुन अवस्थामा थियौ त भन्दछन् कि हामी आफ्ना ठाउँमा कमजोर र असहाय अवस्थामा थियौं । (अनि) फरिश्ताहरूले सोध्छन् कि त्यहाँबाट बसाई सर्न के अल्लाहको धरती फराकिलो थिएन ? त्यस्ता मानिसहरूको बासस्थान नर्क हुनेछ, र त्यो जानु पर्ने अति नराम्रो ठाउँ हो ।

اِنَّ الَّذِيْنَ تَوَفّٰىهُمُ الْمَلٰۗىِٕكَةُ ظَالِمِيْٓ اَنْفُسِهِمْ قَالُوْا فِيْمَ كُنْتُمْ ۭ قَالُوْا كُنَّا مُسْتَضْعَفِيْنَ فِي الْاَرْضِ ۭ قَالُوْٓا اَلَمْ تَكُنْ اَرْضُ اللّٰهِ وَاسِعَةً فَتُهَاجِرُوْا فِيْهَا ۭ فَاُولٰۗىِٕكَ مَاْوٰىهُمْ جَهَنَّمُ ۭ وَسَاۗءَتْ مَصِيْرًا ۝٩٧

९८) तर ती पुरुष, र स्त्री र केटाकेटीहरू बाहेक जो साँच्चै कमजोर र असक्त छन्, जोसँग न त कुनै साधन छ, न त कुनै जाने बाटोको ज्ञान ।

اِلَّا الْمُسْتَضْعَفِيْنَ مِنَ الرِّجَالِ وَالنِّسَاۗءِ وَالْوِلْدَانِ لَا يَسْتَطِيْعُوْنَ حِيْلَةً وَّلَا يَهْتَدُوْنَ سَبِيْلًا ۝٩٨

९९) धेरै सम्भव छ कि यस्तालाई अल्लाहले क्षमा गरिदेओस्, अल्लाह क्षमादाता (र) माफी प्रदान गर्नेवाला छ ।

فَاُولٰۗىِٕكَ عَسَى اللّٰهُ اَنْ يَّعْفُوَ عَنْهُمْ ۭ وَكَانَ اللّٰهُ عَفُوًّا غَفُوْرًا ۝٩٩

१००) जो मानिस आफ्नो घरवार छाडि अल्लाहको बाटोमा लाग्छ उसले धर्तीमा शरणको निम्ति प्रशस्त

وَمَنْ يُّهَاجِرْ فِيْ سَبِيْلِ اللّٰهِ يَجِدْ فِي الْاَرْضِ مُرٰغَمًا كَثِيْرًا وَّسَعَةً ۭ وَمَنْ يَّخْرُجْ مِنْۢ بَيْتِهٖ مُهَاجِرًا اِلَى اللّٰهِ وَرَسُوْلِهٖ

ثُمَّ يُدْرِكْهُ الْمَوْتُ فَقَدْ وَقَعَ أَجْرُهُ عَلَى
اللَّهِ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ﴿١٠٠﴾

ठाउँ र जीविका पनि पाउने छ र जो मानिस आफ्नो घर छाडि अल्लाह र त्यसको रसूलको मार्गमा लाग्नेछ, यदि उसको मृत्यु प्रवासमा हुन्छ भने त्यसको पुरस्कार पनि अल्लाह छेउ निश्चित भइहाल्यो र अल्लाह बडो क्षमा प्रदान गर्नेवाला दयालु छ ।

وَإِذَا ضَرَبْتُمْ فِي الْأَرْضِ فَلَيْسَ عَلَيْكُمْ
جُنَاحٌ أَن تَقْصُرُوا مِنَ الصَّلَاةِ إِنْ خِفْتُمْ أَن
يَفْتِنَكُمُ الَّذِينَ كَفَرُوا ۚ إِنَّ الْكَافِرِينَ كَانُوا
لَكُمْ عَدُوًّا مُّبِينًا ﴿١٠١﴾

१०१) जब तिमी (घर छाडि) यात्राको निम्ति बाहिर जान्छौ त त्यसबेला नमाज़मा कमी (कस्र) गरी पढे पनि कुनै गुनाह छैन, यदि तिमीलाई डर छ कि तिमीलाई काफिरबाट दुःख दिइने छ निःसन्देह काफिरहरू तिम्रो खुल्लमखुल्ला शत्रु हुन् ।

وَإِذَا كُنتَ فِيهِمْ فَأَقَمْتَ لَهُمُ الصَّلَاةَ فَلْتَقُمْ
طَائِفَةٌ مِّنْهُم مَّعَكَ وَلْيَأْخُذُوا أَسْلِحَتَهُمْ
فَإِذَا سَجَدُوا فَلْيَكُونُوا مِن وَرَائِكُمْ وَلْتَأْتِ
طَائِفَةٌ أُخْرَىٰ لَمْ يُصَلُّوا فَلْيُصَلُّوا مَعَكَ
وَلْيَأْخُذُوا حِذْرَهُمْ وَأَسْلِحَتَهُمْ ۗ وَدَّ
الَّذِينَ كَفَرُوا لَوْ تَغْفُلُونَ عَنْ أَسْلِحَتِكُمْ
وَأَمْتِعَتِكُمْ فَيَمِيلُونَ عَلَيْكُم مَّيْلَةً وَاحِدَةً ۚ
وَلَا جُنَاحَ عَلَيْكُمْ إِن كَانَ بِكُمْ أَذًى مِّن مَّطَرٍ
أَوْ كُنتُم مَّرْضَىٰ أَن تَضَعُوا أَسْلِحَتَكُمْ ۖ وَخُذُوا
حِذْرَكُمْ ۗ إِنَّ اللَّهَ أَعَدَّ لِلْكَافِرِينَ عَذَابًا مُّهِينًا ﴿١٠٢﴾

१०२) जब तिमी तिनीहरूमा हुन्छौ र तिनीहरूलाई नमाज पढाउँदछौ भने, यो आवश्यक छ कि एउटा समूह तिम्रो साथमा हतियार सहित उभिराखोस् जब यस समूहले सज्दा गरिसकोस् तब त्यहाँबाट हटेर तिम्रो पछाडी आउन् र अर्को समूह जसले नमाज पढेको छैन, त्यस ठाउँमा आओस् र (सतर्क र सशस्त्र भई) तिम्रो साथमा नमाज पढोस् । काफिरहरू चाहन्छन् कि कुनै प्रकारले तिमी आफ्नो हतियार र सामानहरू प्रति अलिकति पनि असावधान होउ, अनि तिनीहरूले तिमीमाथि एक्कासि आक्रमण गरुन् । हो, यदि तिमी वर्षाको कारण कुनै

कष्टमा वा विरामी छौ भने आफूसँग भएको हतियार नबोक्नुमा कुनै गुनाह छैन, तर आफ्नो सुरक्षाको सामान साथमा राख्नु । निश्चय नै अल्लाहले काफिरहरूको निम्ति तिरस्कारपूर्ण दण्ड तयार गरेको छ ।

فَإِذَا قَضَيْتُمُ الصَّلٰوةَ فَاذْكُرُوا اللّٰهَ قِيٰمًا وَّقُعُوْدًا وَّعَلٰى جُنُوْبِكُمْ ۚ فَإِذَا اطْمَأْنَنْتُمْ فَأَقِيْمُوا الصَّلٰوةَ ۚ إِنَّ الصَّلٰوةَ كَانَتْ عَلَى الْمُؤْمِنِيْنَ كِتٰبًا مَّوْقُوْتًا ﴿١٠٣﴾

१०३) तिमीले नमाज पढिसकेपछि उठ्दा, बस्दा र पल्टदा प्रत्येक अवस्थामा अल्लाहलाई याद गर्ने गर । फेरि जब संतुष्ट होऊ तब नमाज पढ्दै गर । निःसन्देह मोमिनहरूलाई निर्धारित समयमा नमाज पढ्न अनिवार्य छ ।

وَلَا تَهِنُوْا فِي ابْتِغَاءِ الْقَوْمِ ۖ إِنْ تَكُوْنُوْا تَأْلَمُوْنَ فَإِنَّهُمْ يَأْلَمُوْنَ كَمَا تَأْلَمُوْنَ ۚ وَتَرْجُوْنَ مِنَ اللّٰهِ مَا لَا يَرْجُوْنَ ۗ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿١٠٤﴾

१०४) उनीहरूलाई पछ्याउनबाट हार मानेर नबस्नु । यदि तिमीलाई कुनै कष्ट हुन्छ भने त्यस्ता कष्टहरू तिनीहरूलाई पनि हुन्छ, तर तिमीलाई अल्लाहबाट यस्ता आशाहरू छन्, जुनकि तिनीहरूलाई छैन । र अल्लाह सबै कुराको ज्ञाता र कौशल सम्पन्न छ ।

إِنَّا أَنْزَلْنَا إِلَيْكَ الْكِتٰبَ بِالْحَقِّ لِتَحْكُمَ بَيْنَ النَّاسِ بِمَا أَرٰىكَ اللّٰهُ ۗ وَلَا تَكُنْ لِّلْخَآئِنِيْنَ خَصِيْمًا ﴿١٠٥﴾

१०५) निःसन्देह हामीले तिमीलाई सत्यताका साथ आफ्नो किताब पठाएका छौं, ताकि अल्लाहले तिमीलाई दिएको ज्ञान अनुसार तिमी मानिसहरूका मुद्दाको निसाफ गर्न सक र धोकेबाजहरूको समर्थन नगर्नु ।

وَّاسْتَغْفِرِ اللّٰهَ ۭ اِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ١٠٦

१०६) र अल्लाहसँग क्षमाको लागि प्रार्थना गर । निःसन्देह अल्लाह क्षमादाता, अत्यन्त दयालु छ ।

وَلَا تُجَادِلْ عَنِ الَّذِيْنَ يَخْتَانُوْنَ اَنْفُسَھُمْ ۭ اِنَّ اللّٰهَ لَا يُحِبُّ مَنْ كَانَ خَوَّانًا اَثِيْمًا ١٠٧

१०७) र जुन मानिस आफूबाटै कपट राख्दछन्, त्यस्ताको तर्फबाट विवाद नगर्नु, किनभने अल्लाहले कपट गर्ने र बेईमानहरूलाई प्रेम गर्दैन ।

يَّسْتَخْفُوْنَ مِنَ النَّاسِ وَلَا يَسْتَخْفُوْنَ مِنَ اللّٰهِ وَھُوَ مَعَھُمْ اِذْ يُبَيِّتُوْنَ مَا لَا يَرْضٰى مِنَ الْقَوْلِ ۭ وَكَانَ اللّٰهُ بِمَا يَعْمَلُوْنَ مُحِيْطًا ١٠٨

१०८) तिनीहरू मानिसहरूबाट त लुक्न सक्दछन् तर अल्लाहबाट लुक्न सक्दैनन् । जब यिनीहरू रातिराति आपसमा ती कुराहरू बारे छलफल गर्दछन्, जसलाई अल्लाहले रुचाउँदैनन् । त्यतिखेर पनि अल्लाह यिनीहरूको नजीक हुने गर्दछ । अल्लाहले यिनीहरूका सम्पूर्ण क्रियाकलापलाई आफ्नो घेरामा राखेको छ ।

هٰٓاَنْتُمْ هٰٓؤُلَاۗءِ جٰدَلْتُمْ عَنْھُمْ فِي الْحَيٰوةِ الدُّنْيَا ۣ فَمَنْ يُّجَادِلُ اللّٰهَ عَنْھُمْ يَوْمَ الْقِيٰمَةِ اَمْ مَّنْ يَّكُوْنُ عَلَيْهِمْ وَكِيْلًا ١٠٩

१०९) हो तिमी त्यही नै हौ जसले सांसारिक जीवनमा त तिनीहरूको पक्ष लियौ, तर क़ियामतको दिन तिनीहरूको तर्फबाट अल्लाहसँग कसले पक्ष लिने छ ? र त्यो को हो जसले तिनीहरूको वकालत गर्न सकोस् ?

وَمَنْ يَّعْمَلْ سُوْۗءًا اَوْ يَظْلِمْ نَفْسَهٗ ثُمَّ يَسْتَغْفِرِ اللّٰهَ يَجِدِ اللّٰهَ غَفُوْرًا رَّحِيْمًا ١١٠

११०) जुन मानिसले कुनै गुनाह गर्छ वा आफूलाई नै नराम्रो हुने कुनै काम गर्दछ र पछि अल्लाहसँग क्षमा माँगदछ भने त्यसले अल्लाहलाई क्षमादाता दयालु पाउने छ ।

وَمَنْ يَّكْسِبْ اِثْمًا فَاِنَّمَا يَكْسِبُهٗ عَلٰى نَفْسِهٖ ؕ وَكَانَ اللّٰهُ عَلِيْمًا حَكِيْمًا ﴿۱۱۱﴾

१११) र यदि कसैले गुनाह गर्दछ भने त्यसको भारी उसैमाथि छ र अल्लाह सर्वज्ञाता र सर्वबुद्धि सम्पन्न छ ।

وَمَنْ يَّكْسِبْ خَطِيْٓـَٔةً اَوْ اِثْمًا ثُمَّ يَرْمِ بِهٖ بَرِيْٓـًٔا فَقَدِ احْتَمَلَ بُهْتَانًا وَّاِثْمًا مُّبِيْنًا ﴿۱۱۲﴾

११२) र जुन मानिसले कुनै गल्ती वा पाप गरेर त्यसको आरोप कुनै निर्दोष माथि थोपार्दछ, उसले खुला गुनाह र झूठो आरोपको वबाल आफ्नै टाउकोमा बोकिहाल्यो ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكَ وَرَحْمَتُهٗ لَهَمَّتْ طَّآئِفَةٌ مِّنْهُمْ اَنْ يُّضِلُّوْكَ ؕ وَمَا يُضِلُّوْنَ اِلَّآ اَنْفُسَهُمْ وَمَا يَضُرُّوْنَكَ مِنْ شَيْءٍ ؕ وَاَنْزَلَ اللّٰهُ عَلَيْكَ الْكِتٰبَ وَالْحِكْمَةَ وَعَلَّمَكَ مَا لَمْ تَكُنْ تَعْلَمُ ؕ وَكَانَ فَضْلُ اللّٰهِ عَلَيْكَ عَظِيْمًا ﴿۱۱۳﴾

११३) यदि तिमीमाथि अल्लाहको कृपा र दया नभएको भए, तिनीहरूमध्ये एउटा समूहले तिमीलाई मार्गबाट विचलित गराउन प्रण नै गरिसकेको थियो तर वास्तवमा तिनीहरू आफूलाई नै कुबाटोमा लगाई रहेका छन् । र यिनीहरूले तिम्रो केही पनि बिगार्न सक्दैनन् । अल्लाह तिमीलाई ग्रन्थ र बुद्धिमता प्रदान गऱ्यो र तिमीलाई ती कुराहरूको ज्ञान दियो जुनकि तिमीलाई थाहा थिएन र तिमीमाथि अल्लाहको ठूलो कृपा छ ।

لَا خَيْرَ فِيْ كَثِيْرٍ مِّنْ نَّجْوٰىهُمْ اِلَّا مَنْ اَمَرَ بِصَدَقَةٍ اَوْ مَعْرُوْفٍ اَوْ اِصْلَاحٍۢ بَيْنَ النَّاسِ ؕ وَمَنْ يَّفْعَلْ ذٰلِكَ ابْتِغَآءَ مَرْضَاتِ اللّٰهِ فَسَوْفَ نُؤْتِيْهِ اَجْرًا عَظِيْمًا ﴿۱۱۴﴾

११४) तिनीहरूका धेरै जसो गोप्य छलफलमा भलाई छैन । तर हो, त्यस मानिसको सरसल्लाहमा छ, जसले दान वा असल काम वा आपसमा मेलमिलापको कुरा गर्दछ, जसले अल्लाहको प्रसन्ताको लागि यो काम गर्दछ भने हामीले त्यसलाई ठूलो पुरस्कार प्रदान गर्ने छौं ।

| | |
|---|---|
| ११५) यदि कुनै मानिस सही बाटो थाहा पाइसकेपछि पनि रसूल (स.)को विरोध गर्दछ र अन्य मोमिनहरूको बाटो छाडि आर्को बाटोमा लाग्दछ भने हामीले त्यसलाई सोही बाटोमा छाडिदिन्छौं, र त्यसलाई जहन्नममा हाल्नेछौं र त्यो जानु पर्ने अति नै नराम्रो ठाउँ हो । | وَمَنْ يُشَاقِقِ الرَّسُولَ مِنْ بَعْدِ مَا تَبَيَّنَ لَهُ الْهُدَىٰ وَيَتَّبِعْ غَيْرَ سَبِيلِ الْمُؤْمِنِينَ نُوَلِّهِ مَا تَوَلَّىٰ وَنُصْلِهِ جَهَنَّمَ ۖ وَسَاءَتْ مَصِيرًا ﴿١١٥﴾ |
| ११६) अल्लाहले उसलाई क्षमा गर्दैन जसले कसैलाई अल्लाहको साझेदार बनाउँछ तर यस बाहेक अन्य जस पापलाई चाहन्छ, क्षमा गर्ने छ र जसले कसैलाई अल्लाहको साझेदार ठह्रायो, त्यसले आफ्नो सही बाटो छाडि धेरै कुबाटोमा लागिसकेको हुन्छ । | إِنَّ اللَّهَ لَا يَغْفِرُ أَنْ يُشْرَكَ بِهِ وَيَغْفِرُ مَا دُونَ ذَٰلِكَ لِمَنْ يَشَاءُ ۚ وَمَنْ يُشْرِكْ بِاللَّهِ فَقَدْ ضَلَّ ضَلَالًا بَعِيدًا ﴿١١٦﴾ |
| ११७) यिनीहरूले त अल्लाहलाई छोडेर स्त्रीहरूलाई पुकार्दछन् र वास्तवमा यिनीहरू उदण्ड शैतानलाई मात्र पूज्दछन् । | إِنْ يَدْعُونَ مِنْ دُونِهِ إِلَّا إِنَاثًا وَإِنْ يَدْعُونَ إِلَّا شَيْطَانًا مَرِيدًا ﴿١١٧﴾ |
| ११८) र अल्लाहले त्यसलाई धिक्कृत गऱ्यो तर उसले अल्लाहका सेवकहरू मध्येबाट एउटा निश्चित भाग लिने कम्मर कसेको छ । | لَعَنَهُ اللَّهُ ۘ وَقَالَ لَأَتَّخِذَنَّ مِنْ عِبَادِكَ نَصِيبًا مَفْرُوضًا ﴿١١٨﴾ |
| ११९) र (शैतानले भन्दछ) तिनीहरूलाई सही बाटोबाट विचलित गराई रहनेछु र अनुचित आशा दिलाइ रहने छु र तिनलाई सिकाउने छु कि जनावरहरूको कान चिर्ने गर र | وَلَأُضِلَّنَّهُمْ وَلَأُمَنِّيَنَّهُمْ وَلَآمُرَنَّهُمْ فَلَيُبَتِّكُنَّ آذَانَ الْأَنْعَامِ وَلَآمُرَنَّهُمْ فَلَيُغَيِّرُنَّ خَلْقَ اللَّهِ ۚ وَمَنْ يَتَّخِذِ الشَّيْطَانَ وَلِيًّا مِنْ دُونِ اللَّهِ فَقَدْ خَسِرَ خُسْرَانًا مُبِينًا ﴿١١٩﴾ |

भन्ने गर्दछु कि अल्लाहबाट रचना गरिएको रूपलाई बिगारने गर । हेर जसले अल्लाहलाई छाडि शैतानलाई आफ्नो मित्र बनाउँछ, त्यो खुला रूपमा हानिमा पर्नेछ ।

يَعِدُهُمْ وَيُمَنِّيهِمْ ۖ وَمَا يَعِدُهُمُ الشَّيْطٰنُ إِلَّا غُرُورًا ﴿١٢٠﴾

१२०) त्यसले तिनीहरूलाई झूठो वचन दिंदैरहने छ र आशा दिलाइरहने छ । र शैतानले जे जति वचन तिनीहरूलाई दिन्छ, ती सबै धोका बाहेक अरु केही पनि होइन ।

أُولٰٓئِكَ مَأْوٰىهُمْ جَهَنَّمُ ۫ وَلَا يَجِدُونَ عَنْهَا مَحِيصًا ﴿١٢١﴾

१२१) यस्ता मानिसहरूको बासस्थान जहन्नम हो र तिनीहरूले त्यहाँबाट कुनै मुक्तिको ठाउँ पाउँने छैनन् ।

وَالَّذِينَ اٰمَنُوا وَعَمِلُوا الصّٰلِحٰتِ سَنُدْخِلُهُمْ جَنّٰتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهٰرُ خٰلِدِينَ فِيهَآ أَبَدًا ۖ وَعْدَ اللّٰهِ حَقًّا ۚ وَمَنْ أَصْدَقُ مِنَ اللّٰهِ قِيلًا ﴿١٢٢﴾

१२२) र जसले ईमान ल्याउँछन् र सत्कर्म गर्दछन्, तिनलाई हामीले ती स्वर्गमा प्रवेश दिनेछौं, जसको मुनि नहरहरू बगिराखेका छन् । यिनी सधैं त्यसैमा रहने छन् । यो अल्लाहको सत्य वाचा हो र अल्लाह भन्दा वचनको पक्का को हुनसक्दछ ?

لَيْسَ بِأَمَانِيِّكُمْ وَلَآ أَمَانِيِّ أَهْلِ الْكِتٰبِ ۗ مَنْ يَعْمَلْ سُوٓءًا يُجْزَ بِهٖ ۙ وَلَا يَجِدْ لَهٗ مِنْ دُونِ اللّٰهِ وَلِيًّا وَّلَا نَصِيرًا ﴿١٢٣﴾

१२३) वास्तविक स्थिति न त तिम्रा इच्छा अनुसार हुन्छ, न त अहले-किताबको इच्छामा निर्भर हुन्छ । जसले नराम्रो कर्म गर्नेछ, त्यसले सोही अनुसारको दण्ड पाउने छ र उसले कसैलाई पाउने छैन जसले अल्लाह समक्ष उसको सिफारिश वा मद्दत गर्न सकोस् ।

१२४) जसले सद्कर्म गर्दछ, चाहे त्यो पुरुष होस् वा स्त्री, ईमान भएको छ भने यस्ता मानिसहरूले जन्नतमा प्रवेश पाउने छन् र तिनीहरू प्रति खजूरको गुठलीको फाँक बराबर (अलिकति) पनि अन्याय गरिने छैन ।

وَمَنْ يَّعْمَلْ مِنَ الصّٰلِحٰتِ مِنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ وَلَا يُظْلَمُوْنَ نَقِيْرًا ﴿١٢٤﴾

१२५) त्यो मानिस भन्दा राम्रो कसको धर्म हुन सक्दछ जसले अल्लाहको आदेश स्वीकार गर्दछ र सद्कर्म पनि गर्दछ र साथै इब्राहीम (अलै.)को धर्मको पनि पालन गर्दछ जुन एकेश्वरवादी हुनु हुन्थियो अल्लाहले इब्राहीम(अलै)लाई आफ्नो मित्र बनाएको छ ।

وَمَنْ اَحْسَنُ دِيْنًا مِّمَّنْ اَسْلَمَ وَجْهَهٗ لِلّٰهِ وَهُوَ مُحْسِنٌ وَّاتَّبَعَ مِلَّةَ اِبْرٰهِيْمَ حَنِيْفًا ۗ وَاتَّخَذَ اللّٰهُ اِبْرٰهِيْمَ خَلِيْلًا ﴿١٢٥﴾

१२६) आकाशहरू र पृथ्वीमा जे जति छ सबै अल्लाहको हो र सम्पूर्ण ब्रह्माण्ड उसैको घेरामा छ ।

وَلِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۗ وَكَانَ اللّٰهُ بِكُلِّ شَىْءٍ مُّحِيْطًا ﴿١٢٦﴾

१२७) तपाईसँग स्त्रीहरूको बारेमा आदेश माँग्दछन्, भनिदिनुस् कि अल्लाह आफैले तिनीहरूको सम्बन्धमा आदेश दिइरहेको छ र कुरआनका जो आयतहरू जुन अनाथ स्त्रीहरूको बारेमा छ, जसलाई तिमीले तिनले पाउनु पर्ने हक (मेहर) दिदैनौ र तिनीहरूसँग निकाह गरिहाल्ने इच्छा राख्दछौ र साथै निःसहाय केटाकेटीहरूको बारेमा र अनाथहरूको साथ न्यायपूर्ण व्यवहार

وَيَسْتَفْتُوْنَكَ فِى النِّسَآءِ ۗ قُلِ اللّٰهُ يُفْتِيْكُمْ فِيْهِنَّ ۙ وَمَا يُتْلٰى عَلَيْكُمْ فِى الْكِتٰبِ فِىْ يَتٰمَى النِّسَآءِ الّٰتِىْ لَا تُؤْتُوْنَهُنَّ مَا كُتِبَ لَهُنَّ وَتَرْغَبُوْنَ اَنْ تَنْكِحُوْهُنَّ وَالْمُسْتَضْعَفِيْنَ مِنَ الْوِلْدَانِ ۙ وَاَنْ تَقُوْمُوْا لِلْيَتٰمٰى بِالْقِسْطِ ۗ وَمَا تَفْعَلُوْا مِنْ خَيْرٍ فَاِنَّ اللّٰهَ كَانَ بِهٖ عَلِيْمًا ﴿١٢٧﴾

गर्ने गर । तिमीले जे जति उपकारको काम गर्दछौ, त्यो सबै अल्लाहलाई थाहा छ ।

وَاِنِ امْرَاَةٌ خَافَتْ مِنْۢ بَعْلِهَا نُشُوْزًا اَوْ اِعْرَاضًا فَلَا جُنَاحَ عَلَيْهِمَآ اَنْ يُّصْلِحَا بَيْنَهُمَا صُلْحًا ۭ وَالصُّلْحُ خَيْرٌ ۭ وَاُحْضِرَتِ الْاَنْفُسُ الشُّحَّ ۭ وَاِنْ تُحْسِنُوْا وَتَتَّقُوْا فَاِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿١٢٨﴾

१२८) यदि कुनै स्त्रीलाई आफ्नो लोग्नेबाट अन्याय वा लापरवाहीको भय छ भने लोग्ने स्वास्नीले आपसमा जे सम्झौता गर्दछन् दुवैलाई कुनै गुनाह छैन । समझ्दारी बहुत राम्रो कुरा हो । सबै मानिसको मनमा लोभ प्रवृत्ति भरिएको छ । यदि तिमी असल व्यवहार र आत्मसंयमी बन्दछौ भने अल्लाहलाई तिम्रा सम्पूर्ण क्रियाकलाप बारे थाहा छ ।

وَلَنْ تَسْتَطِيْعُوْٓا اَنْ تَعْدِلُوْا بَيْنَ النِّسَاۗءِ وَلَوْ حَرَصْتُمْ فَلَا تَمِيْلُوْا كُلَّ الْمَيْلِ فَتَذَرُوْهَا كَالْمُعَلَّقَةِ ۭ وَاِنْ تُصْلِحُوْا وَتَتَّقُوْا فَاِنَّ اللّٰهَ كَانَ غَفُوْرًا رَّحِيْمًا ﴿١٢٩﴾

१२९) तिमीबाट यो सम्भव छैन कि आफ्ना सबै स्वास्नीहरूसित चाहँदा चाहँदै पनि समान रूपले न्याय गर्न सक, तसर्थ एउटैतिर ढल्केर अर्कोलाई अधकल्चोमा नछोडने गर र यदि तिमी सुधार गर्दछौ र आत्मसंयमी बन्दछौ भने अल्लाह निश्चय नै ठूलो क्षमादाता र दयावान छ ।

وَاِنْ يَّتَفَرَّقَا يُغْنِ اللّٰهُ كُلًّا مِّنْ سَعَتِهٖ ۭ وَكَانَ اللّٰهُ وَاسِعًا حَكِيْمًا ﴿١٣٠﴾

१३०) यदि लोग्ने र स्वास्नी एक अर्काबाट छुटिन्छन् भने अल्लाहले प्रत्येकलाई आफ्नो अति दानशीलताले प्रशस्त साधन प्रदान गर्नेछ र अल्लाह अति उदारकर्ता र बुद्धिमता सम्पन्न छ ।

१३१) आकाशहरू र धरतीका सबै वस्तु अल्लाहकै सम्पत्ति हुन् र वास्तवमा जसलाई तिमी भन्दा अगाडि ग्रन्थ प्रदान गरिएको थियो, तिनीहरूलाई र तिमीलाई पनि यही आदेश गरिएको छ कि अल्लाहसित डर मान्ने गर ? र यदि मान्दैनौ भने (याद राख कि) जे जति आकाशहरूमा र पृथ्वीमा छ, सबै अल्लाहकै हो । र अल्लाह सबै आवश्यकताहरूबाट मुक्त र सम्पूर्ण प्रशंसित छ ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۗ وَلَقَدْ وَصَّيْنَا الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ مِنْ قَبْلِكُمْ وَاِيَّاكُمْ اَنِ اتَّقُوا اللّٰهَ ۗ وَاِنْ تَكْفُرُوْا فَاِنَّ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۗ وَكَانَ اللّٰهُ غَنِيًّا حَمِيْدًا ﴿١٣١﴾

१३२) जे जति आकाशहरूमा र पृथ्वीमा छन्, सबै अल्लाहकै अधीनमा छन् र सम्पूर्ण कार्य सम्पन्नताको लागि अल्लाह नै पर्याप्त छ ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۗ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿١٣٢﴾

१३३) हे मानिसहरू ! अल्लाहले चाहेको खण्डमा तिमीहरू सबैलाई समाप्त गर्न सक्दछ । र अरु मानिसहरूलाई सृष्टि गरी ल्याउन सक्दछ र अल्लाह यस कुरामा सर्वशक्ति सम्पन्न छ ।

اِنْ يَّشَاْ يُذْهِبْكُمْ اَيُّهَا النَّاسُ وَيَاْتِ بِاٰخَرِيْنَ ۗ وَكَانَ اللّٰهُ عَلٰى ذٰلِكَ قَدِيْرًا ﴿١٣٣﴾

१३४) यदि कुनै मानिस संसारिक लाभ प्राप्त गर्न चाहन्छ, भने अल्लाहसित संसार र परलोक (दुवै) को लागि पुरस्कार तयार छ । र अल्लाह धेरै सुन्ने र देख्नेवाला हो ।

مَنْ كَانَ يُرِيْدُ ثَوَابَ الدُّنْيَا فَعِنْدَ اللّٰهِ ثَوَابُ الدُّنْيَا وَالْاٰخِرَةِ ۗ وَكَانَ اللّٰهُ سَمِيْعًا ۢ بَصِيْرًا ﴿١٣٤﴾

१३५) हे मोमिनहरू ! न्यायमा दृढताका साथ कायम रहनेवालाहरू र अल्लाहको प्रसन्नताका लागि साँचो गवाही दिनेवाला बन । त्यो तिम्रो वा

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا كُوْنُوْا قَوّٰمِيْنَ بِالْقِسْطِ شُهَدَآءَ لِلّٰهِ وَلَوْ عَلٰٓى اَنْفُسِكُمْ اَوِ الْوَالِدَيْنِ وَالْاَقْرَبِيْنَ ۚ اِنْ يَّكُنْ غَنِيًّا اَوْ فَقِيْرًا فَاللّٰهُ اَوْلٰى بِهِمَا ۗ فَلَا تَتَّبِعُوا الْهَوٰٓى اَنْ تَعْدِلُوْا ۚ وَاِنْ تَلْوٗٓا

أَوْ تُعْرِضُوا فَإِنَّ اللَّهَ كَانَ بِمَا تَعْمَلُونَ خَبِيرًا ﴿١٣٥﴾

तिम्रो आमा-बुवा वा नातेदारहरूको विरुद्ध नै किन नहोस् । त्यो मानिस चाहे धनी होस् अथवा निर्धन, अल्लाह दुवैको हितैषी छ । तसर्थ तिमीले आफ्नै स्वार्थको पछि लागि न्यायलाई नछाडि दिनु । यदि तिमीले कुरा बङ्ग्याएर गवाही दिन्छौ वा साक्षी दिनबाट पन्छिन्छौ भने (याद राख) अल्लाह तिम्रो सबै क्रियाकलाप राम्ररी जान्दछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا آمِنُوا بِاللَّهِ وَرَسُولِهِ وَالْكِتَابِ الَّذِي نَزَّلَ عَلَىٰ رَسُولِهِ وَالْكِتَابِ الَّذِي أَنْزَلَ مِنْ قَبْلُ ۚ وَمَنْ يَكْفُرْ بِاللَّهِ وَمَلَائِكَتِهِ وَكُتُبِهِ وَرُسُلِهِ وَالْيَوْمِ الْآخِرِ فَقَدْ ضَلَّ ضَلَالًا بَعِيدًا ﴿١٣٦﴾

१३६) हे मोमिनहरू ! अल्लाहमाथि र उसको रसूलमाथि र जुन ग्रन्थ अल्लाहले आफ्नो पैगम्बरलाई प्रदान गरेको छ, र त्यसमाथि जुन ग्रन्थहरू त्यो भन्दा अगाडि उतारेको थिए, सबैमाथि आस्था राख । र जसले अल्लाह र फरिश्ताहरू र उसका ग्रन्थहरू र उसका पैगम्बरहरू र अंतिम दिनको इनकार गर्दछ ऊ पथभ्रष्ट भई वास्तविक मार्गबाट धेरै टाढा पुगिसकेको हुन्छ ।

إِنَّ الَّذِينَ آمَنُوا ثُمَّ كَفَرُوا ثُمَّ آمَنُوا ثُمَّ كَفَرُوا ثُمَّ ازْدَادُوا كُفْرًا لَمْ يَكُنِ اللَّهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ سَبِيلًا ﴿١٣٧﴾

१३७) जुन मानिसहरूले मुसलमान भएर फेरि काफिर भए, फेरि मुसलमान भए अनि फेरि काफिर भए फेरि अनास्थातर्फ बढदै गए त्यस्तालाई अल्लाहले न क्षमा गर्ने छ न त सही बाटो देखाउने छ ।

بَشِّرِ الْمُنَافِقِينَ بِأَنَّ لَهُمْ عَذَابًا أَلِيمًا ﴿١٣٨﴾

१३८) कपटीहरूलाई यस बारे समाचार सुनाइदिनु कि तिनीहरूको निम्ति

कष्टदायक सजाय निश्चित छ ।

الَّذِينَ يَتَّخِذُونَ الْكَٰفِرِينَ أَوْلِيَآءَ مِن دُونِ الْمُؤْمِنِينَ ۚ أَيَبْتَغُونَ عِندَهُمُ الْعِزَّةَ فَإِنَّ الْعِزَّةَ لِلَّهِ جَمِيعًا ﴿١٣٩﴾

१३९) जसले मोमिनहरूलाई छाडि काफिरहरूलाई मित्र बनाउने गर्दछन् । के तिनीहरू कहाँ सम्मान प्राप्ति गर्न जान्छन ? सम्पूर्ण सम्मान त अल्लाहकै नियन्त्रणमा छ ।

وَقَدْ نَزَّلَ عَلَيْكُمْ فِي الْكِتَٰبِ أَنْ إِذَا سَمِعْتُمْ ءَايَٰتِ اللَّهِ يُكْفَرُ بِهَا وَيُسْتَهْزَأُ بِهَا فَلَا تَقْعُدُوا مَعَهُمْ حَتَّىٰ يَخُوضُوا فِي حَدِيثٍ غَيْرِهِۦٓ ۚ إِنَّكُمْ إِذًا مِّثْلُهُمْ ۗ إِنَّ اللَّهَ جَامِعُ الْمُنَٰفِقِينَ وَالْكَٰفِرِينَ فِي جَهَنَّمَ جَمِيعًا ﴿١٤٠﴾

१४०) र अल्लाहले तिमीलाई प्रदान गरेको ग्रन्थमा आदेश गरिसकेको छ कि जब तिमी कुनै सभा वा बैठकमा अल्लाहका आयतहरूलाई अस्वीकार गरिराखेको वा तिनको उपहास गरिराखेको सुन, तब त्यस सभामा तिनीहरूको साथमा नबस, जबसम्म तिनीहरू अर्को कुरा गर्न थाल्दैनन् । (अन्यथा) तिमी पनि त्यसबेला तिनीहरू जस्तै भइहाल्नेछौ । यसमा कुनै सन्देह छैन कि अल्लाह सबै मुनाफिक र काफिरहरूलाई नर्कमा एकत्रित गर्नेछ ।

الَّذِينَ يَتَرَبَّصُونَ بِكُمْ فَإِن كَانَ لَكُمْ فَتْحٌ مِّنَ اللَّهِ قَالُوٓا أَلَمْ نَكُن مَّعَكُمْ وَإِن كَانَ لِلْكَٰفِرِينَ نَصِيبٌ قَالُوٓا أَلَمْ نَسْتَحْوِذْ عَلَيْكُمْ وَنَمْنَعْكُم مِّنَ الْمُؤْمِنِينَ ۚ فَاللَّهُ يَحْكُمُ بَيْنَكُمْ يَوْمَ الْقِيَٰمَةِ ۗ وَلَن يَجْعَلَ اللَّهُ لِلْكَٰفِرِينَ عَلَى الْمُؤْمِنِينَ سَبِيلًا ﴿١٤١﴾

१४१) यिनीहरूले तिम्रो परिणाम हेरिराखेका हुन्छन्, फेरि यदि अल्लाहको तर्फबाट तिमीलाई विजय प्राप्त हुन्छ भने तिनीहरू भन्दछन कि के हामी तिम्रो साथमा थिएनौ । र यदि काफिरहरूलाई अलिकति वर्चस्व प्राप्त हुन्छ भने तिनीहरूसित भन्दछन् कि के हामीले जीत प्राप्त गर्न लागेका थिएनौ र के तिमीहरूलाई हामीले मुसलमानहरूबाट बचाएका

थिएनौ ?। तर अल्लाह तिनीहरूको निर्णय कियामतको दिन गर्ने छ । र अल्लाहले कहिल्यै पनि मुसलमानहरूमाथि काफिरहरूलाई विजय प्रदान गर्ने छैन ।

إِنَّ الْمُنَافِقِينَ يُخَادِعُونَ اللَّهَ وَهُوَ خَادِعُهُمْ وَإِذَا قَامُوا إِلَى الصَّلَاةِ قَامُوا كُسَالَىٰ يُرَاءُونَ النَّاسَ وَلَا يَذْكُرُونَ اللَّهَ إِلَّا قَلِيلًا ﴿١٤٢﴾

१४२) मुनाफिक (कप्टीहरू) अल्लाहलाई झुक्याउन खोज्छन् तर उसले तिनीहरूलाई यस झुक्यानको बदला दिनेछ । र जब नमाज पढ्न उभिन्छन् त्यतिखेर अल्छी भई उभिन्छन् अरुलाई देखाउनको लागि मात्र गर्दछन्, र अल्लाहलाई नाममात्रका लागि स्मरण गर्दछन् ।

مُذَبْذَبِينَ بَيْنَ ذَٰلِكَ لَا إِلَىٰ هَٰؤُلَاءِ وَلَا إِلَىٰ هَٰؤُلَاءِ ۚ وَمَن يُضْلِلِ اللَّهُ فَلَن تَجِدَ لَهُ سَبِيلًا ﴿١٤٣﴾

१४३) तिनीहरू बीचमा परी झुण्डिराखेका छन् न तिनीहरूतिर पूरै हुन्छन् न यिनीहरूतिर, र जसलाई अल्लाहले मार्गबाट विचलित गर्दछ त्यसको निम्ति तिमीले कहिल्यै बाटो पाउँदैनौ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا الْكَافِرِينَ أَوْلِيَاءَ مِن دُونِ الْمُؤْمِنِينَ ۚ أَتُرِيدُونَ أَن تَجْعَلُوا لِلَّهِ عَلَيْكُمْ سُلْطَانًا مُّبِينًا ﴿١٤٤﴾

१४४) हे इमानवालाहरू ! मुसलमानहरूलाई छाडि काफिरहरूलाई आफ्ना मित्र नबनाऊ । के तिमी खुला रूपमा अल्लाहको दोषी बन्न चाहन्छौ ?

إِنَّ الْمُنَافِقِينَ فِي الدَّرْكِ الْأَسْفَلِ مِنَ النَّارِ وَلَن تَجِدَ لَهُمْ نَصِيرًا ﴿١٤٥﴾

१४५) यसमा कुनै सन्देह छैन कि मुनाफिकहरू दोजखको (नर्कको) सबैभन्दा तल्लो भागमा ठाउँ पाउने छन् । र तिमीले कसैलाई तिनीहरूको सहायता गरेको पाउने असम्भव छ ।

१४६) हो जसले पश्चाताप गरिहाले र आफ्नो अवस्थामा सुधार गरे र अल्लाहमाथि पूरै विश्वास गरे र खास अल्लाहकै लागि संसारमा धार्मिक कर्म गर्दछन् भने त्यस्ता मानिसहरू मोमिनहरूको साथमा हुनेछन् । र अल्लाहले मोमिनहरूलाई ठूलो पुरस्कार प्रदान गर्नेछ ।

إِلَّا الَّذِينَ تَابُوا وَأَصْلَحُوا وَاعْتَصَمُوا بِاللَّهِ
وَأَخْلَصُوا دِينَهُمْ لِلَّهِ فَأُولَٰئِكَ مَعَ الْمُؤْمِنِينَ ۖ
وَسَوْفَ يُؤْتِ اللَّهُ الْمُؤْمِنِينَ أَجْرًا عَظِيمًا ﴿١٤٦﴾

१४७) यदि तिमी अल्लाह प्रति कृतज्ञ हुन्छौ र त्यसमा विश्वास गर्दछौ भने तिमीलाई अल्लाहले किन सजाय दिने छ ? र अल्लाह ठूलो गुण पारखी र परम ज्ञानी छ ।

مَا يَفْعَلُ اللَّهُ بِعَذَابِكُمْ إِنْ شَكَرْتُمْ
وَآمَنْتُمْ ۚ وَكَانَ اللَّهُ شَاكِرًا عَلِيمًا ﴿١٤٧﴾

१४८) अन्याय भएको व्यक्ति बाहेक अरु (कसै) लाई नराम्रो कार्यको समर्थनमा आवाज उठाउनु अल्लाह मनपराउँदैनन् । र अल्लाह राम्ररी सुनने र जानने वाला छ ।

لَا يُحِبُّ اللَّهُ الْجَهْرَ بِالسُّوءِ مِنَ الْقَوْلِ إِلَّا
مَنْ ظُلِمَ ۚ وَكَانَ اللَّهُ سَمِيعًا عَلِيمًا ﴿١٤٨﴾

१४९) चाहे तिमीहरू राम्रो काम खुलमखुल्ला वा छिपाएर गर अथवा नराम्रो कामलाई क्षमा गर्दछौ त निःसन्देह अल्लाह ठूलो क्षमा दाता, अति शक्तिशाली छ ।

إِنْ تُبْدُوا خَيْرًا أَوْ تُخْفُوهُ أَوْ تَعْفُوا عَنْ سُوءٍ فَإِنَّ
اللَّهَ كَانَ عَفُوًّا قَدِيرًا ﴿١٤٩﴾

१५०) जुन मानिसहरूले अल्लाह र उसका पैगम्बरहरूलाई इन्कार गर्दछन् र अल्लाह र उसको पैगम्बरहरू बीच विभाजन गर्न चाहन्छन् र भन्दछन् कि हामीले केही नबीहरूलाई मान्दछौं र केहीलाई मान्दैनौं र

إِنَّ الَّذِينَ يَكْفُرُونَ بِاللَّهِ وَرُسُلِهِ وَيُرِيدُونَ
أَنْ يُفَرِّقُوا بَيْنَ اللَّهِ وَرُسُلِهِ وَيَقُولُونَ نُؤْمِنُ
بِبَعْضٍ وَنَكْفُرُ بِبَعْضٍ وَيُرِيدُونَ أَنْ
يَتَّخِذُوا بَيْنَ ذَٰلِكَ سَبِيلًا ﴿١٥٠﴾

ईमान र कुफ्रको बीचमा एउटा बाटो निकाल्न चाहन्छन् ।

أُولَٰئِكَ هُمُ الْكَافِرُونَ حَقًّا ۚ وَأَعْتَدْنَا لِلْكَافِرِينَ عَذَابًا مُّهِينًا ﴿١٥١﴾

१५१) उनीहरू निःसन्देह काफिर हुन् र काफिरहरूको लागि हामीले अपमानित सजाय तयार गरी सकेका छौं ।

وَالَّذِينَ آمَنُوا بِاللَّهِ وَرُسُلِهِ وَلَمْ يُفَرِّقُوا بَيْنَ أَحَدٍ مِّنْهُمْ أُولَٰئِكَ سَوْفَ يُؤْتِيهِمْ أُجُورَهُمْ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ﴿١٥٢﴾

१५२) र जुन मानिसहरू अल्लाह र उसका सबै पैगम्बरहरूमाथि विश्वास राख्दछन् र तिनीहरूमा कुनै भेदभाव गर्दैनन्, यिनीहरू नै ती मानिस हुन जसलाई अल्लाहले छिटै तिनीहरूको (राम्रो कर्मको) फल प्रदान गर्ने छ र अल्लाह क्षमादाता र दयावान छ ।

يَسْأَلُكَ أَهْلُ الْكِتَابِ أَن تُنَزِّلَ عَلَيْهِمْ كِتَابًا مِّنَ السَّمَاءِ ۚ فَقَدْ سَأَلُوا مُوسَىٰ أَكْبَرَ مِن ذَٰلِكَ فَقَالُوا أَرِنَا اللَّهَ جَهْرَةً فَأَخَذَتْهُمُ الصَّاعِقَةُ بِظُلْمِهِمْ ۚ ثُمَّ اتَّخَذُوا الْعِجْلَ مِن بَعْدِ مَا جَاءَتْهُمُ الْبَيِّنَاتُ فَعَفَوْنَا عَن ذَٰلِكَ ۚ وَآتَيْنَا مُوسَىٰ سُلْطَانًا مُّبِينًا ﴿١٥٣﴾

१५३) (हे मोहम्मद) तपाई सित "अहले किताब" (यहूदी-ईसाई) माँग गर्दछन् कि तपाईले तिनीहरूका लागि आकाशबाट कुनै ग्रन्थ प्रदान गराउनुस् । यिनीहरू त मूसा (पैगम्बर)(अलै.) सँग यो भन्दा ठूला ठूला माँग गरेका थिए । कि अल्लाहलाई हाम्रो सामु ल्याऊ (अर्थात हाम्रो आँखाको अगाडि ल्याई प्रत्यक्ष देखाऊ) तसर्थ तिनीहरूको यस अत्याचारको कारण तिनीहरू माथि ठूलो चट्याङ्ग खस्यो । अनि स्पष्ट रूपले निशानीहरू आए पछि पनि तिनीहरू बाछोलाई आफ्नो पूज्य बनाए तर हामीले तिनीहरूलाई क्षमा गर्‍यौं र मूसा(अलै.)लाई

प्रत्यक्ष प्रमाण सहित अधिकार प्रदान गर्‍यौं ।

وَرَفَعْنَا فَوْقَهُمُ الطُّورَ بِمِيثَاقِهِمْ وَقُلْنَا لَهُمُ ادْخُلُوا الْبَابَ سُجَّدًا وَقُلْنَا لَهُمْ لَا تَعْدُوا فِي السَّبْتِ وَأَخَذْنَا مِنْهُمْ مِيثَاقًا غَلِيظًا ﴿١٥٤﴾

१५४) र तिनीहरूसित वाचा लिदैं हामीले तिनीहरू सामुन्ने तूर पर्वतलाई खड़ा गर्‍यौं र तिनीहरूलाई आदेश गर्‍यौं कि ढोका भित्र ढोगदै प्रवेश गर र यो पनि आदेश दिऔं कि शनिवारको दिन आदेशको उल्लंघन नगर र तिनीहरूबाट हामीले दृढ प्रतिज्ञा लिऔं ।

فَبِمَا نَقْضِهِمْ مِيثَاقَهُمْ وَكُفْرِهِمْ بِآيَاتِ اللَّهِ وَقَتْلِهِمُ الْأَنْبِيَاءَ بِغَيْرِ حَقٍّ وَقَوْلِهِمْ قُلُوبُنَا غُلْفٌ ۚ بَلْ طَبَعَ اللَّهُ عَلَيْهَا بِكُفْرِهِمْ فَلَا يُؤْمِنُونَ إِلَّا قَلِيلًا ﴿١٥٥﴾

१५५) यो सजाय पनि तिनीहरूको वचन भंग गर्नाले र अल्लाहका आयतहरूबाट इन्कार गर्नाले र नबीहरूलाई (अल्लाहकादूत) अवज्ञा गरी बिना कारण हत्या गर्नाले र यो भन्नाले कि हाम्रो हृदय आवरणले ढाकिएका छन् । अपितु उनीहरूको कुफ्र (अवज्ञा) को कारण तिनीहरूको हृदयलाई अल्लाहले मोहरबन्द गरी दिएका छन त्यस कारण तिनीहरूले कमै मात्र ईमान ल्याउँछन् ।

وَبِكُفْرِهِمْ وَقَوْلِهِمْ عَلَىٰ مَرْيَمَ بُهْتَانًا عَظِيمًا ﴿١٥٦﴾

१५६) र तिनीहरूको नास्तिकताले गर्दा र मरियममाथि गम्भीर दोषारोपणको कारणले पनि ।

وَقَوْلِهِمْ إِنَّا قَتَلْنَا الْمَسِيحَ عِيسَى ابْنَ مَرْيَمَ رَسُولَ اللَّهِ وَمَا قَتَلُوهُ وَمَا صَلَبُوهُ وَلَٰكِنْ شُبِّهَ لَهُمْ ۚ وَإِنَّ الَّذِينَ اخْتَلَفُوا فِيهِ لَفِي شَكٍّ مِنْهُ ۚ مَا لَهُمْ بِهِ مِنْ عِلْمٍ إِلَّا اتِّبَاعَ الظَّنِّ ۚ وَمَا قَتَلُوهُ يَقِينًا ﴿١٥٧﴾

१५७) र यो भन्नाको कारणले कि हामीले मरियमको छोरा अल्लाहको रसूल ईसा मसीहलाई हत्या गरिसकेका छौं जबकि न तिनीहरूले ईसाको

हत्या गरे न त उनलाई सूलीमा चढाए बरु तिनीहरूलाई उनीकै (ईसा मसीह) रूप जस्तो प्रतीत हुने आकार बनाएको थियो । विश्वास गर जुन मानिसहरू उनको सम्बन्धमा मतभेद गर्दछन् तिनीहरू उनको वास्तविक स्थितिबारे शंकामा परेका छन् र भ्रम बाहेक तिनीहरूलाई अरु कुनै ज्ञान छैन, र तिनीहरूले निःसन्देह ईसाको हत्या गर्न सकेनन् ।

بَل رَّفَعَهُ اللَّهُ إِلَيْهِ ۚ وَكَانَ اللَّهُ عَزِيزًا حَكِيمًا ﴿١٥٨﴾

१५८) बरु अल्लाहले उनलाई आफूतिर उठाई लग्यो र अल्लाह सर्वशक्तिशाली तत्वदर्शी हो ।

وَإِن مِّنْ أَهْلِ الْكِتَابِ إِلَّا لَيُؤْمِنَنَّ بِهِ قَبْلَ مَوْتِهِ ۖ وَيَوْمَ الْقِيَامَةِ يَكُونُ عَلَيْهِمْ شَهِيدًا ﴿١٥٩﴾

१५९) र "अहले किताब मध्ये कोही बाँकी रहने छैन जसले हजरत ईसा( अलै.)को मृत्यु भन्दा अगाडि नै उनीमाथि विश्वास" नगरोस् र कियामतका दिन उनी तिनीहरू विरुद्ध साक्षी हुने छन् ।

فَبِظُلْمٍ مِّنَ الَّذِينَ هَادُوا حَرَّمْنَا عَلَيْهِمْ طَيِّبَاتٍ أُحِلَّتْ لَهُمْ وَبِصَدِّهِمْ عَن سَبِيلِ اللَّهِ كَثِيرًا ﴿١٦٠﴾

१६०) तसर्थ यहुदीहरूको अत्याचारको कारणले धेरै जसो वैध (हलाल) वस्तुहरूलाई तिनीहरूको निम्ति हराम (अवैध) बनाई दिऔं र यस कारणले पनि कि तिनीहरू धेरै मानिसहरूलाई अल्लाहको मार्गबाट रोकदैथे ।

وَأَخْذِهِمُ الرِّبَا وَقَدْ نُهُوا عَنْهُ وَأَكْلِهِمْ أَمْوَالَ النَّاسِ بِالْبَاطِلِ ۚ وَأَعْتَدْنَا لِلْكَافِرِينَ مِنْهُمْ عَذَابًا أَلِيمًا ﴿١٦١﴾

१६१) र यो कारणले पनि कि निषेधित गरिए तापनि सूद (व्याज) लिने गर्दथे र यस कारणले पनि कि अरुको धन-सम्पत्ति गलत तरिकाले

खाई दिन्थे र तिनीहरू मध्ये जो काफिर छन्, तिनका निम्ति हामीले कष्ट दायक सजाय तयार गरिसकेका छौं ।

१६२) तर तिनीहरू मध्ये जो राम्रो ज्ञानी छन् र जो मोमिन छन्, तिनीहरूले यस किताबमाथि जुन तपाई माथि उतारियो र जुन किताब तपाई भन्दा पहिला उतारिए सबैमाथि आस्था राख्दछन् र नमाज पढ्दछन् र जकात (दान) दिदाछन् र अल्लाह र कियामतको दिनमाथि आस्था राख्दछन्, तिनीहरूलाई हामीले (शीघ्र नै) ठूलो पुरस्कार प्रदान गर्ने छौं ।

لَٰكِنِ الرَّاسِخُونَ فِي الْعِلْمِ مِنْهُمْ وَالْمُؤْمِنُونَ يُؤْمِنُونَ بِمَا أُنْزِلَ إِلَيْكَ وَمَا أُنْزِلَ مِنْ قَبْلِكَ ۚ وَالْمُقِيمِينَ الصَّلَاةَ ۚ وَالْمُؤْتُونَ الزَّكَاةَ وَالْمُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ أُولَٰئِكَ سَنُؤْتِيهِمْ أَجْرًا عَظِيمًا ﴿١٦٢﴾

१६३) (हे मोहम्मद !) हामीले तपाईलाई त्यस्तै प्रकारले अल्लाहको सन्देश (वह्य) पठाएका छौं, जुन किसिमले नूह(अलै.) र उनीभन्दा पछिका पैगम्बरहरू तर्फ पठायौं, र हामीले अल्लाहको सन्देश इब्राहीम (अलै.) इस्माईल (अलै.), इस्हाक (अलै.), याकूब (अलै.) र उनका सन्तानहरू माथि तथा ईसा (अलै.), अैयूब (अलै.), यूनुस (अलै.), हारून(अलै.) र सुलैमान तर्फ पठायौं र हामीले दाऊद (अलै.)लाई "जबूर" प्रदान गर्‍यौं ।

إِنَّا أَوْحَيْنَا إِلَيْكَ كَمَا أَوْحَيْنَا إِلَىٰ نُوحٍ وَالنَّبِيِّينَ مِنْ بَعْدِهِ ۚ وَأَوْحَيْنَا إِلَىٰ إِبْرَاهِيمَ وَإِسْمَاعِيلَ وَإِسْحَاقَ وَيَعْقُوبَ وَالْأَسْبَاطِ وَعِيسَىٰ وَأَيُّوبَ وَيُونُسَ وَهَارُونَ وَسُلَيْمَانَ ۚ وَآتَيْنَا دَاوُودَ زَبُورًا ﴿١٦٣﴾

१६४) र धेरै पैगम्बरहरू यस्ता छन् जसको बारेमा हामीले तपाईसित यसभन्दा अघि नै भनि सकेका छौं

وَرُسُلًا قَدْ قَصَصْنَاهُمْ عَلَيْكَ مِنْ قَبْلُ وَرُسُلًا لَمْ نَقْصُصْهُمْ عَلَيْكَ ۚ وَكَلَّمَ اللَّهُ مُوسَىٰ تَكْلِيمًا ﴿١٦٤﴾

र धेरै यस्ता छन् जसका सम्बन्धमा तपाईलाई केही भनेका छैनौं । र मूसा(अलै.)सित त अल्लाहले प्रत्यक्ष कुरा पनि गऱ्यो ।

१६५) हामीले उनीलाई रसूल बनायौं । सुसमाचार सुनाउने र सावधानकर्ता ताकि पैगम्बरहरूको आगमन पछि मानिसहरूलाई अल्लाहमाथि दोष लगाउने मौका र विवाद न होस् र अल्लाह सर्वशक्तिमान र तत्वदर्शी हो ।

رُسُلًا مُّبَشِّرِيْنَ وَمُنْذِرِيْنَ لِئَلَّا يَكُوْنَ لِلنَّاسِ عَلَى اللّٰهِ حُجَّةٌۢ بَعْدَ الرُّسُلِ ۗ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ﴿١٦٥﴾

१६६) अल्लाहले जे जति तपाईतिर उतारेको छ उसको बारेमा स्वयम् गवाही दिन्छ कि उसले आफ्नो ज्ञानले उतारेको छ र फरिशताहरू पनि गवाही दिन्छन् र स्वयम् अल्लाह नै साक्षी पर्याप्त छ ।

لٰكِنِ اللّٰهُ يَشْهَدُ بِمَآ اَنْزَلَ اِلَيْكَ اَنْزَلَهٗ بِعِلْمِهٖ ۚ وَالْمَلٰٓئِكَةُ يَشْهَدُوْنَ ۗ وَكَفٰى بِاللّٰهِ شَهِيْدًا ﴿١٦٦﴾

१६७) जसले कुफ्र गरे र (मानिसहरूलाई) अल्लाहको बाटोमा जानबाट रोके, तिनीहरू आफै विचलित भई सही मार्गबाट धेरै पर पुगे ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَصَدُّوْا عَنْ سَبِيْلِ اللّٰهِ قَدْ ضَلُّوْا ضَلٰلًاۢ بَعِيْدًا ﴿١٦٧﴾

१६८) जसले कुफ्र गरे र अन्याय गरिरहे, अल्लाहले निश्चय नै तिनलाई न क्षमा गर्नेछ न त तिनको मार्ग-दर्शन गर्नेछ ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا وَظَلَمُوْا لَمْ يَكُنِ اللّٰهُ لِيَغْفِرَ لَهُمْ وَلَا لِيَهْدِيَهُمْ طَرِيْقًا ﴿١٦٨﴾

१६९) हो, नर्कको बाटो, जसमा तिनीहरू सधैं सधैं रहनेछन् र अल्लाहको लागि यो सजिलो छ ।

اِلَّا طَرِيْقَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۗ وَكَانَ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرًا ﴿١٦٩﴾

يَٰٓأَيُّهَا ٱلنَّاسُ قَدْ جَآءَكُمُ ٱلرَّسُولُ بِٱلْحَقِّ مِن رَّبِّكُمْ فَـَٔامِنُوا۟ خَيْرًا لَّكُمْ ۚ وَإِن تَكْفُرُوا۟ فَإِنَّ لِلَّهِ مَا فِى ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ ۚ وَكَانَ ٱللَّهُ عَلِيمًا حَكِيمًا ﴿١٧٠﴾

१७०) हे मानिसहरू ! अल्लाहको पैगम्बर तिमीहरू छेउ सत्य कुरा लिएर आएका छन् तसर्थ तिमीहरू ईमान ल्याऊ यही नै तिम्रो निम्ति हितकर छ । र यदि तिमी काफिर भयो भने (याद राख) कि जे जति आकाशहरूमा र जमिनमा छन् सबै अल्लाह कै हुन् । र अल्लाह सर्वज्ञ एवं तत्वदर्शी छ ।

يَٰٓأَهْلَ ٱلْكِتَٰبِ لَا تَغْلُوا۟ فِى دِينِكُمْ وَلَا تَقُولُوا۟ عَلَى ٱللَّهِ إِلَّا ٱلْحَقَّ ۚ إِنَّمَا ٱلْمَسِيحُ عِيسَى ٱبْنُ مَرْيَمَ رَسُولُ ٱللَّهِ وَكَلِمَتُهُۥٓ أَلْقَىٰهَآ إِلَىٰ مَرْيَمَ وَرُوحٌ مِّنْهُ ۖ فَـَٔامِنُوا۟ بِٱللَّهِ وَرُسُلِهِۦ ۖ وَلَا تَقُولُوا۟ ثَلَٰثَةٌ ۚ ٱنتَهُوا۟ خَيْرًا لَّكُمْ ۚ إِنَّمَا ٱللَّهُ إِلَٰهٌ وَٰحِدٌ ۖ سُبْحَٰنَهُۥٓ أَن يَكُونَ لَهُۥ وَلَدٌ ۘ لَّهُۥ مَا فِى ٱلسَّمَٰوَٰتِ وَمَا فِى ٱلْأَرْضِ ۗ وَكَفَىٰ بِٱللَّهِ وَكِيلًا ﴿١٧١﴾

१७१) हे अहले किताब ! -यहूदी-ईसाई) आफ्नो धर्मको सीमोल्लङ्घन न गर र अल्लाहको बारेमा सत्य बाहेक अरु केही न भन । मरियमका छोरा ईसा मसीह(अलै.) (न त अल्लाह थिए न अल्लाहका छोरा बरु) अल्लाहका रसूलमात्र र उसको पवित्र सन्देश वाहक मात्र थिए, जो अल्लाहको वाणीबाट पैदा भए जसलाई अल्लाहले मरियमलाई प्रदान गरेको थियो र उसको तर्फबाट पठाइएका एउटा रूह (आत्मा) थिए, तसर्थ तिमीहरूले अल्लाह र उसका सबै रसूलहरू माथि आस्था राख र न भन कि अल्लाह तीन वटा छन् र यो धारणाबाट टाढा रह किनकि तिम्रो निम्ति यही नै राम्रो छ । अल्लाह एउटै मात्र पूजनीय छ र यो कुरासँग उसको कुनै सम्बन्ध छैन कि उसका सन्तान छन् । जे जति

आकाशहरूमा र जमिनमा छन् सबै उसैको हुन् र अल्लाह नै संरक्षक स्वरूप प्रयाप्त छ ।

لَنْ يَّسْتَنْكِفَ الْمَسِيْحُ اَنْ يَّكُوْنَ عَبْدًا لِّلّٰهِ وَلَا الْمَلٰٓئِكَةُ الْمُقَرَّبُوْنَ ؕ وَمَنْ يَّسْتَنْكِفْ عَنْ عِبَادَتِهٖ وَيَسْتَكْبِرْ فَسَيَحْشُرُهُمْ اِلَيْهِ جَمِيْعًا ﴿۱۷۲﴾

१७२) मसिह(अलै.)ले अल्लाहको भक्त हुनुमा कदापि अपमान ठान्दैनन् र न त सान्निघ्य फरिशताहरूले उसको उपासनालाई आफ्नो अपमान ठान्छन् र जसले उसको उपासनालाई आफनो अपमान ठान्छन् र घमण्ड गर्छन अल्लाह उनी सबैलाई आफूनिर एकत्रित गर्नेछ ।

فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَيُوَفِّيْهِمْ اُجُوْرَهُمْ وَيَزِيْدُهُمْ مِّنْ فَضْلِهٖ ۚ وَاَمَّا الَّذِيْنَ اسْتَنْكَفُوْا وَاسْتَكْبَرُوْا فَيُعَذِّبُهُمْ عَذَابًا اَلِيْمًا ۙ وَّلَا يَجِدُوْنَ لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿۱۷۳﴾

१७३) यसर्थ जसले ईमान ल्याएका छन् र सत्कर्म गरेका छन्, उसले तिनलाई पूरा प्रतिफल प्रदान गर्नेछ र आफ्नो कृपाले अरु बढी नै प्रदान गर्नेछ र जसले अपमान ठाने र घमण्ड गरे, त्यसलाई कष्ट दायक सजाय दिनेछ र यिनीहरूले अल्लाह बाहेक कसैलाई आफ्ना समर्थक र सहयोगी पाउँने छैनन् ।

يٰٓاَيُّهَا النَّاسُ قَدْ جَآءَكُمْ بُرْهَانٌ مِّنْ رَّبِّكُمْ وَاَنْزَلْنَآ اِلَيْكُمْ نُوْرًا مُّبِيْنًا ﴿۱۷۴﴾

१७४) हे मानिसहरू ! तिम्रो रबबाट तिम्रो पासमा स्पष्ट प्रमाण आई सकेको छ र हामीले तिमी तिर चम्किने प्रकाश पठाइसकेका छौं ।

فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَاعْتَصَمُوْا بِهٖ فَسَيُدْخِلُهُمْ فِيْ رَحْمَةٍ مِّنْهُ وَفَضْلٍ ۙ وَّيَهْدِيْهِمْ اِلَيْهِ صِرَاطًا مُّسْتَقِيْمًا ﴿۱۷۵﴾

१७५) तसर्थ जसले अल्लाहमाथि आस्था राखे र उसलाई दृघतापुर्वक समाति राखे त त्यसले तिनलाई आफ्नो दया र कृपा छिटै प्रदान गर्ने छ र तिनलाई आफूतिर (पुग्न

लागि) सोभ्रो बाटो देखाउने छ ।

يَسْتَفْتُوْنَكَ ۗ قُلِ اللّٰهُ يُفْتِيْكُمْ فِى الْكَلٰلَةِ ۗ اِنِ امْرُؤٌا هَلَكَ لَيْسَ لَهٗ وَلَدٌ وَّلَهٗٓ اُخْتٌ فَلَهَا نِصْفُ مَا تَرَكَ ۚ وَهُوَ يَرِثُهَآ اِنْ لَّمْ يَكُنْ لَّهَا وَلَدٌ ۚ فَاِنْ كَانَتَا اثْنَتَيْنِ فَلَهُمَا الثُّلُثٰنِ مِمَّا تَرَكَ ۗ وَاِنْ كَانُوْٓا اِخْوَةً رِّجَالًا وَّنِسَآءً فَلِلذَّكَرِ مِثْلُ حَظِّ الْاُنْثَيَيْنِ ۗ يُبَيِّنُ اللّٰهُ لَكُمْ اَنْ تَضِلُّوْا ۗ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿١٧٦﴾

१७६) (हे पैगम्बर !) मानिसहरूले तपाईसँग कलालाको सम्बन्धमा (कलाला भनेको त्यो व्यक्ति हो जसको वारिसको रूपमा बाबू र सन्तान नभएको) अल्लाहको आदेश जान्न खोज्दै छन् । भनिदिनुस् कि अल्लाह आफैले कलालाको सम्बन्धमा यो आदेश गर्दछ कि यदि कुनै यस्तो व्यक्तिको मृत्यु हुन्छ जसको कुनै सन्तान छैन र त्यसको एउटी बहिनी अथवा दिदी छिन् भने मृतकको सम्पत्तिबाट आधा भाग पाउने छिन्, र यदि तिनको मृत्यु हुन्छ र कुनै सन्तान छैन भने तिनको (मृतक दिदी अथवा बहिनी) वारिस तिनकै भाइ हुनेछ र यदि दाजु वा भाइको मृत्यु हुन्छ र उसका दुईटा बहिनी अथवा दिदी वा दिदी बहिनी छिन् भने ती दुवैले (मृतकले छाडेर गएको सम्पत्तिको) दुई तिहाई भागको हकवाला हुनेछिन् र यदि भाइ र बहिनी अर्थात लोग्ने मान्छे र स्वास्नी मानिसहरू वारिस छन् भने लोग्ने मानिसको भाग, स्वास्नी मानिसको भागको दुई गुणा हुनेछ । अल्लाहले (यी आदेशहरू) तिमीसित यस कारणले वर्णन गर्दछ कि तिमीले भूल गर्दै न हिंड र अल्लाह हरेक कुराको ज्ञाता छ ।

# सूरतुल् माइदाः-५




सूरतुल् माइदाः मदनी हो यसमा १२० आयत र १६ रुकूअ्हरू छन् ।

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो बडो कृपालु र अत्यन्त दयालु छ ।**

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ أَوْفُواْ بِٱلْعُقُودِ ۚ أُحِلَّتْ
لَكُم بَهِيمَةُ ٱلْأَنْعَٰمِ إِلَّا مَا يُتْلَىٰ عَلَيْكُمْ غَيْرَ مُحِلِّى
ٱلصَّيْدِ وَأَنتُمْ حُرُمٌ ۗ إِنَّ ٱللَّهَ يَحْكُمُ مَا يُرِيدُ ①

१) हे ईमानदार मानिसहरू! आफ्ना वाचाहरूलाई पूरा गर । तिम्रा लागि चार खुट्टे जनावरहरू(घास चर्ने पशुहरू) हलाल (वैध) गरिएका छन् । (तर) ती होइनन् जसको बारेमा तिमीलाई पढेर सुनाइनेछ, परन्तु हजको एहराममा शिकार गर्ने कुरा हलाल न सम्झनु । निःसन्देह अल्लाहले जस्तो चाहन्छ, आदेश गर्दछ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تُحِلُّواْ شَعَٰٓئِرَ ٱللَّهِ وَلَا
ٱلشَّهْرَ ٱلْحَرَامَ وَلَا ٱلْهَدْىَ وَلَا ٱلْقَلَٰٓئِدَ وَلَآ ءَآمِّينَ
ٱلْبَيْتَ ٱلْحَرَامَ يَبْتَغُونَ فَضْلًا مِّن رَّبِّهِمْ وَرِضْوَٰنًا ۚ
وَإِذَا حَلَلْتُمْ فَٱصْطَادُواْ ۚ وَلَا يَجْرِمَنَّكُمْ شَنَـَٔانُ قَوْمٍ
أَن صَدُّوكُمْ عَنِ ٱلْمَسْجِدِ ٱلْحَرَامِ أَن تَعْتَدُواْ ۘ
وَتَعَاوَنُواْ عَلَى ٱلْبِرِّ وَٱلتَّقْوَىٰ ۖ وَلَا تَعَاوَنُواْ عَلَى
ٱلْإِثْمِ وَٱلْعُدْوَٰنِ ۚ وَٱتَّقُواْ ٱللَّهَ ۖ إِنَّ ٱللَّهَ
شَدِيدُ ٱلْعِقَابِ ②

२) हे मोमिनहरू! अल्लाहका निशानीहरूको अपमान नगर्नु र न त पवित्र महिनाहरूको र न त कुर्बानीका जनावरहरूको जसका घाँटीहरूमा पट्टि बाँधिएका छन् । र न त तिनीहरूको अपमान गर्नु जो कि अफ्ना रबको अनुग्रह र प्रसन्नताको लागि पवित्र घर बैतुल्लाह तिर गई राखेका छन् र जब एहराम फुकाउँछौ भने इच्छा भएको खण्डमा शिकार गर्न सक्दछौ । र कुनै समूहले तिमीलाई मर्यादित मस्जिदमा जानबाट रोकेका थिए,

त तिनीहरूसंग शत्रुताको कारण तिनीहरूमाथि अन्याय गर्न नथाल र (हेर !) संयम्पूर्ण र भलाईका कामहरूमा एक अर्काको मद्दत गर्ने गर र गुनाह (अपराध) र अत्याचारका कुराहरूमा सहयोग नगर, र अल्लाह सित डर मान्ने गर । निःसन्देह अल्लाह कठोर दण्डदिने वाला हो ।

३) तिम्रो लागि मृतक जनावर र रगत र सुँगुरको मासु र जुन कुरामा अल्लाह बाहेक अरु कसैको नाम पुकारिएको छ र जुन जनावरलाई घाँटी अठ्याएर मारिन्छ र जुन कुनै चोट लागेबाट मर्छ र जुन कुनै अग्लो ठाउँबाट लडेर मर्छ र जुन कसैको सिंगको प्रहारबाट मर्दछ, यी सबै हराम (वर्जित) छन् र ती जनावरहरू पनि जसलाई कुनै हिंसक पशुले चिथोरेर मारेको हुन्छ तर जसलाई तिमीले (मर्नुभन्दा अगाडि) जब्ह (वैध) गरिहाल्छौ, भने ती जनावरहरू वर्जित हुँदैनन् । र त्यस्ता जनावर पनि हराम छन् जसलाई कुनै स्थानमा (बलि बेदीमा) जब्ह गरिएको हुन्छ र तीर चलाई भाग्यको खेल खेलेर मारिएको मासु पनि त्याज्य छ । यी सबै नराम्रा काम हुन् । आज काफिरहरू तिम्रो धर्मबाट निराश भई सकेका छन्,

حُرِّمَتْ عَلَيْكُمُ الْمَيْتَةُ وَالدَّمُ وَلَحْمُ الْخِنْزِيرِ وَمَا
أُهِلَّ لِغَيْرِ اللَّهِ بِهِ وَالْمُنْخَنِقَةُ وَالْمَوْقُوذَةُ
وَالْمُتَرَدِّيَةُ وَالنَّطِيحَةُ وَمَا أَكَلَ السَّبُعُ إِلَّا
مَا ذَكَّيْتُمْ وَمَا ذُبِحَ عَلَى النُّصُبِ وَأَنْ تَسْتَقْسِمُوا
بِالْأَزْلَامِ ذَٰلِكُمْ فِسْقٌ الْيَوْمَ يَئِسَ الَّذِينَ كَفَرُوا
مِنْ دِينِكُمْ فَلَا تَخْشَوْهُمْ وَاخْشَوْنِ الْيَوْمَ أَكْمَلْتُ
لَكُمْ دِينَكُمْ وَأَتْمَمْتُ عَلَيْكُمْ نِعْمَتِي وَرَضِيتُ لَكُمُ
الْإِسْلَامَ دِينًا فَمَنِ اضْطُرَّ فِي مَخْمَصَةٍ غَيْرَ
مُتَجَانِفٍ لِإِثْمٍ فَإِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ ﴿٣﴾

खबरदार तिनीहरूसित न डर र मसित मात्र डर मान्ने गर । आज हामीले तिम्रो निम्ति तिम्रो धर्मलाई पूर्ण गरिसकेका छौं र तिम्रालागि आफ्ना कृपाहरू पूरा गरिसकेका छौं र तिम्रो लागि इस्लाम धर्म रोज्यौ, तर यदि कुनै व्यक्ति भोखले बाध्य भएर गुनाह तिर प्रवृत्त नभई खाइहाल्छ भने अल्लाह क्षमादाता र दयालु छ ।

يَسْـَٔلُونَكَ مَاذَآ أُحِلَّ لَهُمْ ۖ قُلْ أُحِلَّ لَكُمُ ٱلطَّيِّبَٰتُ ۙ وَمَا عَلَّمْتُم مِّنَ ٱلْجَوَارِحِ مُكَلِّبِينَ تُعَلِّمُونَهُنَّ مِمَّا عَلَّمَكُمُ ٱللَّهُ ۖ فَكُلُوا۟ مِمَّآ أَمْسَكْنَ عَلَيْكُمْ وَٱذْكُرُوا۟ ٱسْمَ ٱللَّهِ عَلَيْهِ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ سَرِيعُ ٱلْحِسَابِ ﴿٤﴾

४) (तिनीहरू) तपाई सित सोध्छन् कि तिनीहरूका लागि कुन कुन कुराहरू ग्रहण गर्न योग्य छन् । भनिदिनुस् कि सम्पूर्ण पवित्र कुराहरू तिम्रा लागि हलाल छन् । र ती शिकार खेल्न राखिएका पशुहरू पनि जसलाई तिमीले सिकाएर राखेका छौ जुन (तरिकाले) अल्लाहले तिमीलाई (शिकार गर्न) सिकाएको छ, (त्यो तरिकाले) तिमीले सिकाएका छौ भने यदि तिनीहरूले तिम्रो निम्ति शिकार समाति ल्याउँछन् भने त्यसलाई खान सक्छौ र त्यस माथि अल्लाहको नाम लिने गर । र अल्लाहसित डर मान्ने गर । निःसन्देह अल्लाह छिट्टै हिसाब लिनेवाला छ ।

ٱلْيَوْمَ أُحِلَّ لَكُمُ ٱلطَّيِّبَٰتُ ۖ وَطَعَامُ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ حِلٌّ لَّكُمْ وَطَعَامُكُمْ حِلٌّ لَّهُمْ ۖ وَٱلْمُحْصَنَٰتُ مِنَ ٱلْمُؤْمِنَٰتِ وَٱلْمُحْصَنَٰتُ مِنَ ٱلَّذِينَ أُوتُوا۟ ٱلْكِتَٰبَ مِن قَبْلِكُمْ إِذَآ ءَاتَيْتُمُوهُنَّ أُجُورَهُنَّ مُحْصِنِينَ غَيْرَ

५) आज तिम्रो निम्ति सम्पूर्ण पवित्र कुराहरू हलाल गरिएका छन् र अहले किताब (यहूदि, ईसाई)ले जब्ह गरेको मासु वा खाना पनि

مُسٰفِحِيْنَ وَلَا مُتَّخِذِيْٓ اَخْدَانٍ ۭ وَمَنْ يَّكْفُرْ
بِالْاِيْمَانِ فَقَدْ حَبِطَ عَمَلُهٗ ۡ وَهُوَ فِي الْاٰخِرَةِ مِنَ
الْخٰسِرِيْنَ ۝٥

तिमीलाई हलाल छ र तिमिले जब्ह गरेको मासु वा भोजन उनीहरूका लागी हलाल छन् । पवित्र मोमिन स्वास्नी मानिसहरू र ती मानिसहरू जसलाई तिमी भन्दा पहिला किताब प्रदान गरिएको थियो । तिनीहरूका पवित्र स्वास्नी मानिसहरू पनि हलाल छिन्, जब कि तिनको मोहर तिमीले दिन्छौ, यसरी कि तिनीहरूसँग पवित्र सम्बन्ध राख्ने उद्देश्यले विवाह गर्नु होस् न कि खुल्लमखुल्ला वा लुकीछिपी व्यभिचार गर्ने उद्देश्यले । यदि कसैले ईमान त्याग्छ भने त्यसका सबै कर्महरू निरर्थक छन् र आखिरतमा (अन्तिम दिनमा) तिनीहरू नोक्सानी भोग्नेहरूमा हुनेछन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِذَا قُمْتُمْ اِلَى الصَّلٰوةِ
فَاغْسِلُوْا وُجُوْهَكُمْ وَاَيْدِيَكُمْ اِلَى الْمَرَافِقِ
وَامْسَحُوْا بِرُءُوْسِكُمْ وَاَرْجُلَكُمْ اِلَى الْكَعْبَيْنِ ۭ وَاِنْ
كُنْتُمْ جُنُبًا فَاطَّهَّرُوْا ۭ وَاِنْ كُنْتُمْ مَّرْضٰٓى
اَوْ عَلٰي سَفَرٍ اَوْ جَاۗءَ اَحَدٌ مِّنْكُمْ مِّنَ الْغَاۗىِٕطِ
اَوْ لٰمَسْتُمُ النِّسَاۗءَ فَلَمْ تَجِدُوْا مَاۗءً فَتَيَمَّمُوْا
صَعِيْدًا طَيِّبًا فَامْسَحُوْا بِوُجُوْهِكُمْ وَاَيْدِيْكُمْ
مِّنْهُ ۭ مَا يُرِيْدُ اللّٰهُ لِيَجْعَلَ عَلَيْكُمْ مِّنْ حَرَجٍ
وَّلٰكِنْ يُّرِيْدُ لِيُطَهِّرَكُمْ وَلِيُتِمَّ نِعْمَتَهٗ
عَلَيْكُمْ لَعَلَّكُمْ تَشْكُرُوْنَ ۝٦

६) हे मोमिनहरू! जब तिमीले नमाज पढ्ने विचार गर्छौ तब मुख र कुइनो समेत हात धुनु र आफ्नो टाउकोको मसह (पानीले हात भिजाई निधारदेखि पछाडिसम्म स्पर्श) गर र आफ्ना खुट्टा गोली गाँठोदेखि छेपारीसम्म धोऊ र यदि तिमी अपवित्र छौ भने स्नान गर र यदि तिमी विरामी छौ वा यात्रामा छौ वा तिमीहरूमध्ये कोही शौचालयबाट (दिशाबाट निवृत भएर) आएको छ वा तिमीले स्वास्नीसँग सहवास गरेका छौ र

तिमीलाई पानी उपलब्ध छैन भने पवित्र माटोलाई स्पर्श गरी हात र मुखको मसह (स्पर्श) गर । अल्लाहले तिमीलाई अप्ठ्यारोमा पार्न चाहँदैन, बरु त्यो तिमीलाई पवित्र गर्न चाहन्छ र आफ्नो असीम कृपा तिमीलाई प्रदान गर्न चाहन्छ जसबाट तिमी कृतज्ञ भई नै रह ।

وَاذْكُرُوْا نِعْمَةَ اللّٰهِ عَلَيْكُمْ وَمِيْثَاقَهُ الَّذِيْ وَاثَقَكُمْ بِهٖٓ ۙ اِذْ قُلْتُمْ سَمِعْنَا وَاَطَعْنَا ۡ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ۝٧

७) र अल्लाहले तिमी माथि जुन अनुकम्पा गरेको छ त्यसलाई सम्भी राख र त्यस वाचालाई पनि जुनकि उसले तिमीबाट लिएको थियो, जब तिमीले भनेका थियौ कि हामीले (अल्लाहको आदेश) सुनिहाल्यौं र स्वीकार गर्‍यौं । र अल्लाहसँग डराई राख किन भने अल्लाह तिम्रा हृदयका गोप्य कुराहरू राम्ररी जान्दछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا كُوْنُوْا قَوّٰمِيْنَ لِلّٰهِ شُهَدَآءَ بِالْقِسْطِ ۡ وَلَا يَجْرِمَنَّكُمْ شَنَاٰنُ قَوْمٍ عَلٰٓى اَلَّا تَعْدِلُوْا ؕ اِعْدِلُوْا ۫ هُوَ اَقْرَبُ لِلتَّقْوٰى ۡ وَاتَّقُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ خَبِيْرٌۢ بِمَا تَعْمَلُوْنَ ۝٨

८) हे मोमिनहरू! अल्लाहको निम्ति सत्यमा कायम रहदै, सत्य निष्ठाका साथ साक्षी बन । र कुनै जातिको शत्रुता तिमीलाई न्यायको मार्गबाट विचलित न गरोस्, उनीहरूसित न्याय गर्ने गर, किनभने यही नै संयमको नजीक हुन्छ, र अल्लाह सित डर । विश्वास गर कि अल्लाहलाई तिम्रा सम्पूर्ण क्रियाकलापहरू बारे राम्ररी थाहा छ ।

९) जुन मानिसहरू ईमान ल्याउँछन् र असल कर्म गर्दछन्, तिनीहरूका लागि मुक्ति र ठूलो पुरस्कार प्रदान गर्ने अल्लाहको वाचा छ ।

وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ۙ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ عَظِيْمٌ ﴿٩﴾

१०) र जसले ईमान ल्याएनन् र हाम्रा आयतहरूलाई झूठो ठहराउँदछन् । तिनीहरू नारकीय छन् ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ﴿١٠﴾

११) मोमिनहरू हो ! अल्लाहले तिमीहरू माथि जो अनुकम्पा गरेको छ त्यसको स्मरण गर, जब एउटा समुदायले तिम्रो विरोधमा हात उठाउने प्रयास गरे त अल्लाहले तिनका हातलाई तिम्रो समीप पुग्नबाट रोकिदियो र अल्लाहसित डर, र मोमिनहरूलाई अल्लाहमाथि मात्र भरोसा राख्नु पर्दछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اذْكُرُوْا نِعْمَتَ اللّٰهِ عَلَيْكُمْ اِذْ هَمَّ قَوْمٌ اَنْ يَّبْسُطُوْٓا اِلَيْكُمْ اَيْدِيَهُمْ فَكَفَّ اَيْدِيَهُمْ عَنْكُمْ ۚ وَاتَّقُوا اللّٰهَ ۗ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿١١﴾

१२) र अल्लाहले बनी इस्राईलबाट वाचा लियो र तिनीहरूमध्येबाट हामीले बाह्र जना प्रमुखहरूको नियुक्ति गर्‍यौं, अनि अल्लाहले भन्यो कि म अवश्य तिम्रो साथमा छु । यदि तिमीले नमाज पढ्दै गर्‍यौ र जकात (दान) दिंदै गर्‍यौ र मेरो पैगम्बरहरूलाई मान्दै गर्‍यौ र तिनीहरूको मद्दत गर्दै गर्‍यौ र अल्लाहलाई (कर्जे हसना) राम्रो ऋण दिने गर्‍यौ भने तिमीबाट निःसन्देह तिम्रा त्रुटिहरू अलग राखिदिनेछु र तिमीलाई त्यस्तो

وَلَقَدْ اَخَذَ اللّٰهُ مِيْثَاقَ بَنِيْٓ اِسْرَآءِيْلَ ۚ وَبَعَثْنَا مِنْهُمُ اثْنَيْ عَشَرَ نَقِيْبًا ۗ وَقَالَ اللّٰهُ اِنِّيْ مَعَكُمْ ۗ لَئِنْ اَقَمْتُمُ الصَّلٰوةَ وَاٰتَيْتُمُ الزَّكٰوةَ وَاٰمَنْتُمْ بِرُسُلِيْ وَعَزَّرْتُمُوْهُمْ وَاَقْرَضْتُمُ اللّٰهَ قَرْضًا حَسَنًا لَّاُكَفِّرَنَّ عَنْكُمْ سَيِّاٰتِكُمْ وَلَاُدْخِلَنَّكُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ فَمَنْ كَفَرَ بَعْدَ ذٰلِكَ مِنْكُمْ فَقَدْ ضَلَّ سَوَآءَ السَّبِيْلِ ﴿١٢﴾

स्वर्गमा (बगैंचा) प्रवेश दिने छु, जसको तल नहरहरू बगिराखेका छन् । तर, यस वाचा र कबूल पछि तिमीहरूमध्ये कोही अवज्ञाकारी बन्दछ भने ऊ पक्कै सत्य मार्गबाट विचलित भई टाढा पुग्ने छ ।

فَبِمَا نَقْضِهِمْ مِّيْثَاقَهُمْ لَعَنّٰهُمْ وَجَعَلْنَا
قُلُوْبَهُمْ قٰسِيَةً ۚ يُحَرِّفُوْنَ الْكَلِمَ عَنْ
مَّوَاضِعِهٖ ۙ وَنَسُوْا حَظًّا مِّمَّا ذُكِّرُوْا بِهٖ ۚ
وَلَا تَزَالُ تَطَّلِعُ عَلٰى خَآئِنَةٍ مِّنْهُمْ اِلَّا
قَلِيْلًا مِّنْهُمْ فَاعْفُ عَنْهُمْ
وَاصْفَحْ ۗ اِنَّ اللّٰهَ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿١٣﴾

१३) फेरि तिनीहरूले वचन तोडि दिएको हुनाले हामीले तिनीहरूलाई तिरस्कृत गऱ्यौ, र तिनीहरूका हृदयलाई कठोर बनाइदियौं । किनभने यिनीहरूले शब्दहरूलाई (वह्यगरिएका वाणीलाई) तिनका ठाउँबाट बदलिहाल्दछन् र जुन कुराको तिनीहरूलाई निर्देश दिइएको थियो, त्यसको ठूलो भागलाई बिर्सी सकेका छन्, र केही मानिसहरू बाहेक सधैं तिनीहरूको एउटा न एउटा छलकपटको कुरा तिमीहरूलाई जानकारी दिई राखिने छौं । तसर्थ तिनीहरूलाई क्षमा गरिदेऊ र तिनीको कुराको वास्ता नगर, किनकि अल्लाहले भलाई गर्नेहरूलाई मायाँ गर्दछ ।

وَمِنَ الَّذِيْنَ قَالُوْٓا اِنَّا نَصٰرٰٓى اَخَذْنَا
مِيْثَاقَهُمْ فَنَسُوْا حَظًّا مِّمَّا ذُكِّرُوْا بِهٖ ۠
فَاَغْرَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَآءَ
اِلٰى يَوْمِ الْقِيٰمَةِ ۗ وَسَوْفَ يُنَبِّئُهُمُ
اللّٰهُ بِمَا كَانُوْا يَصْنَعُوْنَ ﴿١٤﴾

१४) र जुन मानिसहरूले आफूलाई ईसाई भन्दछन् हामीले तिनीहरूबाट पनि वाचा लिएका थियौ तर तिनीहरूले पनि त्यसको ठूलो भाग बिर्सी हाले, अनि हामीले पनि तिनीहरूको बीचमा कियामतको दिन सम्म शत्रुता र घृणा जागृत गराइहाल्यौ

र शीघ्र नै अल्लाहले तिनीहरूलाई तिनको कर्मको जानकारी दिनेछ ।

يَٰٓأَهْلَ ٱلْكِتَٰبِ قَدْ جَآءَكُمْ رَسُولُنَا يُبَيِّنُ لَكُمْ كَثِيرًا مِّمَّا كُنتُمْ تُخْفُونَ مِنَ ٱلْكِتَٰبِ وَيَعْفُوا۟ عَن كَثِيرٍ ۚ قَدْ جَآءَكُم مِّنَ ٱللَّهِ نُورٌ وَكِتَٰبٌ مُّبِينٌ ﴿١٥﴾

१५) हे अहले किताब ! तिम्रो नजीकमा निश्चय नै हाम्रो पैगम्बर आइसकेको छ । जसले कि तिमीलाई किताबको धेरै यस्ता कुराहरू स्पष्ट गर्दैछ जुन तिमीले लुकाउँदथ्यौ र तिम्रा धेरै त्रुटिहरूलाई क्षमा गर्दैछ । निःसन्देह तिम्रो नजीकमा अल्लाहबाट प्रकाश र स्पष्ट किताब (कुरआन) आइसकेको छ ।

يَهْدِى بِهِ ٱللَّهُ مَنِ ٱتَّبَعَ رِضْوَٰنَهُۥ سُبُلَ ٱلسَّلَٰمِ وَيُخْرِجُهُم مِّنَ ٱلظُّلُمَٰتِ إِلَى ٱلنُّورِ بِإِذْنِهِۦ وَيَهْدِيهِمْ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿١٦﴾

१६) जसको माध्यमबाट अल्लाहले त्यस्ताहरूलाई शान्तिमार्ग देखाउँछ जसले कि उसको प्रसन्नता प्राप्त गर्न चाहन्छन् र आफ्नो दैवानुग्रहद्वारा अँध्यारोबाट निकालि, उज्यालो तिर लैजान्छ र तिनीहरूलाई सोझो बाटोमा मार्ग दर्शन गर्दछ ।

لَّقَدْ كَفَرَ ٱلَّذِينَ قَالُوٓا۟ إِنَّ ٱللَّهَ هُوَ ٱلْمَسِيحُ ٱبْنُ مَرْيَمَ ۚ قُلْ فَمَن يَمْلِكُ مِنَ ٱللَّهِ شَيْـًٔا إِنْ أَرَادَ أَن يُهْلِكَ ٱلْمَسِيحَ ٱبْنَ مَرْيَمَ وَأُمَّهُۥ وَمَن فِى ٱلْأَرْضِ جَمِيعًا ۗ وَلِلَّهِ مُلْكُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَمَا بَيْنَهُمَا ۚ يَخْلُقُ مَا يَشَآءُ ۚ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿١٧﴾

१७) जति मानिसहरूले यो भन्दछन् कि अल्लाह नै ईसा बिन मरियम हुन् । तिनीहरू निःसन्देह काफिर हुन् । तपाईले भनिदिनुस् कि यदि अल्लाह, ईसा बिन मरियम र उनको आमा र पृथ्वीका सबै मानिसहरूलाई नष्ट गर्न चाहन्छ भने, उसको अगाडि कसको के लाग्न सक्छ ? र आकाश जमीन र जे जति दुवैको बीचमा छन्, सबै अल्लाहकै हुन् । उसले जे चाहन्छ सृष्टि गर्दछ र अल्लाह प्रत्येक

कुरा माथि शक्ति सम्पन्न छ ।

१८) यहूदी र ईसाई भन्दछन् कि हामी अल्लाहका छोराहरू र उसका प्रिय हौं । तपाईले भनिदिनुस् कि त्यसो भए त्यसले तिमीहरूलाई तिमीहरूको अपराधको लागि सजाय किन दिन्छ ? (त्यो होइन), बरु तिमीहरू पनि अन्य सृष्टि गरिएका मनिसहरू जस्तै हौ । उसैले जसलाई चाहन्छ क्षमा प्रदान गर्छ र जसलाई चाहन्छ सजाय दिन्छ । आकाशहरू र पृथ्वी र जे जति तिनको बीचमा छन्, सबै अल्लाह कै सम्पत्ति हुन् र (सबैलाई) उसै छेउ फर्केर जानु छ ।

وَقَالَتِ الْيَهُوْدُ وَالنَّصٰرٰى نَحْنُ اَبْنٰٓؤُا اللّٰهِ وَاَحِبَّآؤُهٗ ؕ قُلْ فَلِمَ يُعَذِّبُكُمْ بِذُنُوْبِكُمْ ؕ بَلْ اَنْتُمْ بَشَرٌ مِّمَّنْ خَلَقَ ؕ يَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُ ؕ وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ؗ وَاِلَيْهِ الْمَصِيْرُ ﴿١٨﴾

१९) हे अहले किताब ! पैगम्बरहरूको आउने क्रम जुनकि केही समयसम्म बन्द थियो, अब तिम्रा छेउ हाम्रो पैगम्बर आइसकेका छन्, जसले कि तिमीसित (हाम्रा आदेशहरू) स्पष्ट गरी वर्णन गर्दछन् ताकि तिमीले यो न भन्नसक कि हामी छेउ कोही राम्रो, नराम्रो सुनाउने आउँदै आएन, हेर अब तिम्रा छेउ सुसमाचार सुनाउने र सावधान गराउने आइसकेको छ र अल्लाह प्रत्येक कुरा माथि शक्ति सम्पन्न छ ।

يٰٓاَهْلَ الْكِتٰبِ قَدْ جَآءَكُمْ رَسُوْلُنَا يُبَيِّنُ لَكُمْ عَلٰى فَتْرَةٍ مِّنَ الرُّسُلِ اَنْ تَقُوْلُوْا مَا جَآءَنَا مِنْۢ بَشِيْرٍ وَّلَا نَذِيْرٍ ؗ فَقَدْ جَآءَكُمْ بَشِيْرٌ وَّنَذِيْرٌ ؕ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٩﴾

२०) र यादगर जब मूसा(अलै.)ले आफ्नो कौमलाई भने, हे मेरो कौमका मानिसहरू! अल्लाहले तिमी माथि

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ اذْكُرُوْا نِعْمَةَ اللّٰهِ عَلَيْكُمْ اِذْ جَعَلَ فِيْكُمْ اَنْۢبِيَآءَ وَجَعَلَكُمْ مُّلُوْكًا ۖ وَّاٰتٰىكُمْ مَّا لَمْ يُؤْتِ اَحَدًا مِّنَ الْعٰلَمِيْنَ ﴿٢٠﴾

गरेको कृपाको स्मरण गर कि उसले तिमीहरूमध्येबाट पैगम्बर बनायो र तिमीलाई राजा बनायो र तिमीलाई त्यति प्रदान गऱ्यो जति संसारका अरु कसैलाई प्रदान गरेन ।

يٰقَوْمِ ادْخُلُوا الْاَرْضَ الْمُقَدَّسَةَ الَّتِيْ كَتَبَ اللّٰهُ لَكُمْ وَلَا تَرْتَدُّوْا عَلٰٓى اَدْبَارِكُمْ فَتَنْقَلِبُوْا خٰسِرِيْنَ ﴿٢١﴾

२१) हे मेरा कौमका मानिसहरू ! तिमीहरू यस पवित्र भूभागमा (फलस्तीनको बैतुल मुकद्दस) प्रवेश गर जुन अल्लाहले तिम्रो निम्ति निर्धारित गरेको छ । र हेर संघर्षको समयमा पछाडि न हट्नु अन्यथा ठूलो नोक्सानीमा पर्नेछौ ।

قَالُوْا يٰمُوْسٰٓى اِنَّ فِيْهَا قَوْمًا جَبَّارِيْنَ ۖ وَاِنَّا لَنْ نَّدْخُلَهَا حَتّٰى يَخْرُجُوْا مِنْهَا ۚ فَاِنْ يَّخْرُجُوْا مِنْهَا فَاِنَّا دٰخِلُوْنَ ﴿٢٢﴾

२२) तिनीहरूले भन्न थाले कि हे मूसा (अलै.)! त्यहाँ त साह्रै बलिया र सामर्थवान मानिसहरू बस्दछन् र जबसम्म तिनीहरू त्यहाँबाट निस्केर जाँदैनन् तबसम्म हामी त त्यहाँ जान सक्तैनौ, तर हो, यदि तिनीहरू त्यहाँबाट निस्किहाल्छन् भने हामी प्रवेश गरिहाल्छौ ।

قَالَ رَجُلٰنِ مِنَ الَّذِيْنَ يَخَافُوْنَ اَنْعَمَ اللّٰهُ عَلَيْهِمَا ادْخُلُوْا عَلَيْهِمُ الْبَابَ ۚ فَاِذَا دَخَلْتُمُوْهُ فَاِنَّكُمْ غٰلِبُوْنَ ۬ۚ وَعَلَى اللّٰهِ فَتَوَكَّلُوْٓا اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ﴿٢٣﴾

२३) दुई जनाले जो अल्लाहसित डर मान्ने मध्येबाट थिए, जसमाथि अल्लाहको कृपा थियो, भने कि तिमीहरू मूल ढोकाबाट प्रवेश गर (आक्रमण गरिहाल) र प्रवेश गर्नु साथ विजय तिम्रो नै हुनेछ । र साँच्चिकै ईमान भएका हौ भने अल्लाहमाथि भरोसा गर्ने गर ।

قَالُوْا يٰمُوْسٰٓى اِنَّا لَنْ نَّدْخُلَهَآ اَبَدًا مَّا دَامُوْا فِيْهَا فَاذْهَبْ اَنْتَ وَرَبُّكَ فَقَاتِلَآ اِنَّا هٰهُنَا قٰعِدُوْنَ ﴿٢٤﴾

२४) तिनीहरूले भने, हे मूसा (अलै.) ! जबसम्म तिनीहरू त्यहाँ छन्, हामी कहिल्यै त्यहाँ जान सक्तैनौं । त्यसकारण तिमी र तिम्रो अल्लाह दुवै गएर लडाई गर, हामी यहाँ बसिरहने छौं ।

قَالَ رَبِّ اِنِّيْ لَآ اَمْلِكُ اِلَّا نَفْسِيْ وَاَخِيْ فَافْرُقْ بَيْنَنَا وَبَيْنَ الْقَوْمِ الْفٰسِقِيْنَ ﴿٢٥﴾

२५) मूसा(अलै.)ले अल्लाहसँग विन्ति गरे कि हे परवरदिगार ! मलाई आफू माथि र मेरा साक्खै भाइ बाहेक अन्य कसैमाथि कुनै अधिकार छैन, तसर्थ तिमीले हामीलाई यी अवज्ञाकारीहरूबाट अलग गरिदेऊ ।

قَالَ فَاِنَّهَا مُحَرَّمَةٌ عَلَيْهِمْ اَرْبَعِيْنَ سَنَةً ۚ يَتِيْهُوْنَ فِي الْاَرْضِ ۗ فَلَا تَاْسَ عَلَى الْقَوْمِ الْفٰسِقِيْنَ ﴿٢٦﴾

२६) आदेश भयो कि अब तिनीहरूको निम्ति चालीस वर्षसम्मको लागि पृथ्वी हराम गरिएको छ, यिनीहरू जंगल क्षेत्रमा यता-उता हिडि राख्ने छन्, तसर्थ ती अवज्ञाकारीहरूको लागि तिमीले चिन्ता नगर ।

وَاتْلُ عَلَيْهِمْ نَبَاَ ابْنَيْ اٰدَمَ بِالْحَقِّ ۘ اِذْ قَرَّبَا قُرْبَانًا فَتُقُبِّلَ مِنْ اَحَدِهِمَا وَلَمْ يُتَقَبَّلْ مِنَ الْاٰخَرِ ۗ قَالَ لَاَقْتُلَنَّكَ ۗ قَالَ اِنَّمَا يَتَقَبَّلُ اللّٰهُ مِنَ الْمُتَّقِيْنَ ﴿٢٧﴾

२७) (हे मुहम्मद स.अ. !) तिनीहरूलाई आदम(अलै.)का दुईटा छोरा (हाबील र काबील) का कुराहरू पनि सुनाई दिनु कि जब ती दुवैले (अल्लाहलाई) केही भेंट अर्पित गरे, तब एउटाको भेंटी स्वीकार भयो र अर्कोको स्वीकार भएन । उसले (काबीलले) भन्न थाल्यो कि मैले तिमीलाई हत्या गर्नेछु । (हाबीलले) भन्यो कि अल्लाहले आत्म संयमीहरूको कर्मस्वीकार गर्ने गर्दछ ।

لَئِنْ بَسَطْتَّ اِلَيَّ يَدَكَ لِتَقْتُلَنِيْ مَآ اَنَا بِبَاسِطٍ يَّدِيَ اِلَيْكَ لِاَقْتُلَكَ ۚ اِنِّيْٓ اَخَافُ اللّٰهَ رَبَّ الْعٰلَمِيْنَ ﴿٢٨﴾

२८) यदि तिमीले मलाई मार्न हात उठाउँछौ भने म तिमीलाई मार्न हात उठाउन्न, मलाई त अल्लाह, सम्पूर्ण ब्रह्माण्डको स्वामीबाट डर लाग्छ ।

اِنِّيْٓ اُرِيْدُ اَنْ تَبُوْٓاَ بِاِثْمِيْ وَاِثْمِكَ فَتَكُوْنَ مِنْ اَصْحٰبِ النَّارِ ۚ وَذٰلِكَ جَزٰٓؤُا الظّٰلِمِيْنَ ﴿٢٩﴾

२९) म त चाहन्छु कि तिमीले मेरो पाप र आफ्नो पाप आफ्नै टाउकोमा राख जसले गर्दा तिमी नारकीयहरूमध्ये होऊ र अत्याचारीहरूको लागि यही नै दण्ड हो ।

فَطَوَّعَتْ لَهٗ نَفْسُهٗ قَتْلَ اَخِيْهِ فَقَتَلَهٗ فَاَصْبَحَ مِنَ الْخٰسِرِيْنَ ﴿٣٠﴾

३०) यसरी उसको मनले उसलाई आफ्नो भाइको हत्या गर्न उत्तेजित गऱ्यो अनि उसले यसको हत्या गरिहाल्यो र जसबाट आफू हानि भोग्नेहरूमा परिहाल्यो ।

فَبَعَثَ اللّٰهُ غُرَابًا يَّبْحَثُ فِي الْاَرْضِ لِيُرِيَهٗ كَيْفَ يُوَارِيْ سَوْءَةَ اَخِيْهِ ۗ قَالَ يٰوَيْلَتٰٓى اَعَجَزْتُ اَنْ اَكُوْنَ مِثْلَ هٰذَا الْغُرَابِ فَاُوَارِيَ سَوْءَةَ اَخِيْ ۚ فَاَصْبَحَ مِنَ النّٰدِمِيْنَ ﴿٣١﴾

३१) त्यसपछि अल्लाहले एउटा काग पठायो, जसले कि माटो यसकारण खनी रहेको थियो कि त्यसलाई देखाओस् कि उसले आफ्नो भाइको मृतक शरीर कसरी लुकाओस् । उसले भन्न थाल्यो कि ज्यादै दुःखको कुरो छ कि मबाट यति पनि हुन सकेन कि म यस काग जस्तो आफ्नो भाइको शव लुकाउन सकूँ । अनि उसलाई पछुतो भयो र ऊ लज्जितहरूमध्ये भयो ।

مِنْ اَجْلِ ذٰلِكَ ۛ كَتَبْنَا عَلٰى بَنِيْٓ اِسْرَآءِيْلَ اَنَّهٗ مَنْ قَتَلَ نَفْسًا بِغَيْرِ نَفْسٍ اَوْ فَسَادٍ فِي الْاَرْضِ فَكَاَنَّمَا قَتَلَ النَّاسَ جَمِيْعًا ۗ وَمَنْ

३२) यस कारणले हामीले इस्राईलका मानिसहरूका लागि यो आदेश गऱ्यौं कि यदि कुनै मानिसले कुनै

أَحْيَاهَا فَكَأَنَّمَا أَحْيَا النَّاسَ جَمِيعًا ۚ وَلَقَدْ جَاءَتْهُمْ رُسُلُنَا بِالْبَيِّنَاتِ ثُمَّ إِنَّ كَثِيرًا مِّنْهُم بَعْدَ ذَٰلِكَ فِي الْأَرْضِ لَمُسْرِفُونَ ﴿٣٢﴾

मानिसको हत्या गर्दछ कसैको हत्या गरेको वा देशमा उपद्रव फैलाउने बाहेकको अवस्थामा, भने त्यसले अन्य तमाम मानिसहरूको हत्या गरे सरह हुनेछ, र यदि कसैले एउटाको जीवन बचायो भने सम्पूर्ण मानिसहरूको जीवन बचाए सरह हुन्छ। र तिनीहरू कहाँ हाम्रा धेरै पैगम्बरहरू स्पष्ट तर्कहरूलिएर पुगिसकेका छन् । अनि यसपछि पनि तिनीहरूमध्ये धेरैले मुलुकमा बलजफ्ती र ज्यादती गर्ने गर्दछन् ।

إِنَّمَا جَزَاءُ الَّذِينَ يُحَارِبُونَ اللَّهَ وَرَسُولَهُ وَيَسْعَوْنَ فِي الْأَرْضِ فَسَادًا أَن يُقَتَّلُوا أَوْ يُصَلَّبُوا أَوْ تُقَطَّعَ أَيْدِيهِمْ وَأَرْجُلُهُم مِّنْ خِلَافٍ أَوْ يُنفَوْا مِنَ الْأَرْضِ ۚ ذَٰلِكَ لَهُمْ خِزْيٌ فِي الدُّنْيَا ۖ وَلَهُمْ فِي الْآخِرَةِ عَذَابٌ عَظِيمٌ ﴿٣٣﴾

३३) जुन मानिसहरू अल्लाह र उसको रसूलको विरोधमा युद्ध गर्दछन् र देशमा उपद्रव फैलाउँदै हिंड्दछन्, त्यस्ताको सजाय तिनीहरूको हत्या गर्नु वा फाँसी दिइनु वा एक तिरको हात र खुट्टा काटिनु वा मुलुकबाट निष्कासित गर्नु हो । यो त यस संसारमा उनको अपमानजनक (सजाय) हो र आखिरत (अन्तिम दिन) को दिनमा तिनीहरूका लागि ठूलो सजाय तयार छ ।

إِلَّا الَّذِينَ تَابُوا مِن قَبْلِ أَن تَقْدِرُوا عَلَيْهِمْ ۖ فَاعْلَمُوا أَنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٣٤﴾

३४) (तर हो) जसले तिम्रो कब्जामा आउनुभन्दा अगाडि नै प्रायश्चित गरिहाले, त याद राख कि अल्लाह ठूलो क्षमा-दाता र दयावान छ ।

३५) मुस्लिमहरू हो ! अल्लाहसित डर मान्ने गर र उसको सामीप्य प्राप्त गर्ने उपायको खोजी गर र उसको बाटोमा जिहाद (धर्म युद्ध) गर जसबाट तिम्रो भलो हुन सकोस् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَابْتَغُوْٓا اِلَيْهِ الْوَسِيْلَةَ وَجَاهِدُوْا فِيْ سَبِيْلِهٖ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٣٥﴾

३६) विश्वास गर कि काफिरहरूका लागि यदि तिनीहरूसँग पृथ्वीमा भएको सम्पूर्ण धन-सम्पत्ति बरु त्यसभन्दा पनि बढी किन नहोस् र त्यसलाई कियामतको दिन सजायबाट मुक्त हुनाका लागि दिन चाहन्छन् भने पनि त्यो स्वीकार्य हुने छैन र तिनलाई कष्ट दायक सजाय हुनेछ ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا لَوْ اَنَّ لَهُمْ مَّا فِي الْاَرْضِ جَمِيْعًا وَّمِثْلَهٗ مَعَهٗ لِيَفْتَدُوْا بِهٖ مِنْ عَذَابِ يَوْمِ الْقِيٰمَةِ مَا تُقُبِّلَ مِنْهُمْ ۚ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٣٦﴾

३७) तिनले इच्छा राख्नेछन् कि नर्कको आगोबाट उम्कि हालुन् तर त्यसबाट यिनीहरू कदापि बाहिर निस्कन सक्नैनन् र तिनीहरूका निम्ति निरन्तर सजाय छ

يُرِيْدُوْنَ اَنْ يَّخْرُجُوْا مِنَ النَّارِ وَمَا هُمْ بِخٰرِجِيْنَ مِنْهَا ۫ وَلَهُمْ عَذَابٌ مُّقِيْمٌ ﴿٣٧﴾

३८) र जसले चोरी गर्दछ, चाहे त्यो पुरुष होस् अथवा स्त्री, तिनीहरूको हात काटिहाल । यो तिनीहरूको कर्मको सजाय र अल्लाहबाट एउटा पाठ हो र अल्लाह सर्वशक्तिमान र तत्वदर्शी छ ।

وَالسَّارِقُ وَالسَّارِقَةُ فَاقْطَعُوْٓا اَيْدِيَهُمَا جَزَآءًۢ بِمَا كَسَبَا نَكَالًا مِّنَ اللّٰهِ ۭ وَاللّٰهُ عَزِيْزٌ حَكِيْمٌ ﴿٣٨﴾

३९) जसले पाप गरेपछि तौबा (प्रायश्चित) गर्दछ र आफ्नो सुधार गरिदिन्छ भने अल्लाहले उसको तौबा स्वीकार गर्नेछ, निःसन्देह अल्लाह क्षमादाता दयावान छ ।

فَمَنْ تَابَ مِنْۢ بَعْدِ ظُلْمِهٖ وَاَصْلَحَ فَاِنَّ اللّٰهَ يَتُوْبُ عَلَيْهِ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٣٩﴾

४०) के तिमीलाई थाहा छैन कि आकाशहरू र पृथ्वीमा अल्लाहकै राज्य छ ? जसलाई चाहन्छ दण्डित गर्दछ र जसलाई चाहन्छ क्षमा गर्दछ । र अल्लाह प्रत्येक कुरामाथि शक्ति सम्पन्न छ ।

أَلَمْ تَعْلَمْ أَنَّ اللّٰهَ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۭ يُعَذِّبُ مَنْ يَّشَاۗءُ وَيَغْفِرُ لِمَنْ يَّشَاۗءُ ۭ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ۝

४१) हे पैगम्बर ! जुन मानिसहरू आपसमा अवज्ञाकारितामा प्रतिस्पर्धा गर्ने गर्दछन् तिनीहरूको पछाडि नपर्नुस्, तिनीहरूमध्ये केही यस्ता छन् जो मुखले भन्दछन् कि हामी मोमिन हौं तर तिनको आत्माले ईमान ल्याएको हुँदैन र यहूदीहरूमध्ये केही यस्ता छन् जो गलत कुरा सुन्न अभ्यस्त छन् र तिनीहरूको जासूसी गर्दै हिंड्दछन् जुन अहिलेसम्म तपाईं कहाँ आएका छैनन् । तिनीहरूले शब्दहरू सही ठाउँबाट झिकी परिवर्तित गर्दछन् र भन्दछन् कि यदि तिमीलाई यही आदेश प्राप्त हुन्छ भने त्यसलाई स्वीकार गरिहाल्नु र यदि यो आदेश हुँदैन भने अलग्गै रहनु र यदि कसैलाई अल्लाहले बाटोबाट विचलित गर्न चाहन्छ भने त्यसको निम्ति तपाईंलाई अल्लाहबाट अलिकति पनि अधिकार छैन । यिनी त्यस्ता मानिसहरू हुन् जसका हृदयलाई अल्लाहले पवित्र गर्न चाहेन । तिनीहरूको निम्ति

يٰٓاَيُّهَا الرَّسُوْلُ لَا يَحْزُنْكَ الَّذِيْنَ يُسَارِعُوْنَ فِي الْكُفْرِ مِنَ الَّذِيْنَ قَالُوْٓا اٰمَنَّا بِاَفْوَاهِهِمْ وَلَمْ تُؤْمِنْ قُلُوْبُهُمْ ۛ وَمِنَ الَّذِيْنَ هَادُوْا ۛ سَمّٰعُوْنَ لِلْكَذِبِ سَمّٰعُوْنَ لِقَوْمٍ اٰخَرِيْنَ ۙ لَمْ يَاْتُوْكَ ۭ يُحَرِّفُوْنَ الْكَلِمَ مِنْۢ بَعْدِ مَوَاضِعِهٖ ۚ يَقُوْلُوْنَ اِنْ اُوْتِيْتُمْ هٰذَا فَخُذُوْهُ وَاِنْ لَّمْ تُؤْتَوْهُ فَاحْذَرُوْا ۭ وَمَنْ يُّرِدِ اللّٰهُ فِتْنَتَهٗ فَلَنْ تَمْلِكَ لَهٗ مِنَ اللّٰهِ شَيْـًٔا ۭ اُولٰۗىِٕكَ الَّذِيْنَ لَمْ يُرِدِ اللّٰهُ اَنْ يُّطَهِّرَ قُلُوْبَهُمْ ۭ لَهُمْ فِي الدُّنْيَا خِزْيٌ ښ وَّلَهُمْ فِي الْاٰخِرَةِ عَذَابٌ عَظِيْمٌ ۝

संसारमा पनि ठूलो तिरस्कार छ र अखिरत (परलोक)मा पनि ठूलो सजाय छ ।

سَمّٰعُوْنَ لِلْكَذِبِ اَكّٰلُوْنَ لِلسُّحْتِ ؕ فَاِنْ جَآءُوْكَ فَاحْكُمْ بَيْنَهُمْ اَوْ اَعْرِضْ عَنْهُمْ ۚ وَاِنْ تُعْرِضْ عَنْهُمْ فَلَنْ يَّضُرُّوْكَ شَيْـًٔا ؕ وَاِنْ حَكَمْتَ فَاحْكُمْ بَيْنَهُمْ بِالْقِسْطِ ؕ اِنَّ اللّٰهَ يُحِبُّ الْمُقْسِطِيْنَ ﴿٤٢﴾

४२) यिनी कान थापेर झूठ सुन्नेहरू हुन् र पेट भरी हराम (वर्जित) कुरा खानेहरू हुन् । यदि यिनीहरू तिमी कहाँ आउँछन् भने तिमीले त्यसको फैसला गरिदिनु वा इन्कार गरिदिनु र यदि तिमीले इन्कार गर्दछौ भने तिनीहरूले तिम्रो केही बिगार्न सक्ने छैनन् । र यदि फैसला गर्न चाहन्छौ भने इन्साफका साथ न्याय गर्नु किनकि अल्लाहले निसाफ गर्नेहरूलाई माया गर्दछ ।

وَكَيْفَ يُحَكِّمُوْنَكَ وَعِنْدَهُمُ التَّوْرٰىةُ فِيْهَا حُكْمُ اللّٰهِ ثُمَّ يَتَوَلَّوْنَ مِنْۢ بَعْدِ ذٰلِكَ ؕ وَمَاۤ اُولٰٓئِكَ بِالْمُؤْمِنِيْنَ ﴿٤٣﴾

४३) (आश्चर्यको कुरा छ कि) यिनीहरू तिमीबाट कसरी फैसला गराउने छन् जबकि स्वयं यिनीहरूसँग तौरात छँदैछ जसमा कि अल्लाहको आदेश छ । फेरि पनि त्यसलाई इन्कार गर्दछन् । वास्तवमा यिनीहरूमा आस्था र ईमान नै छैन ।

اِنَّاۤ اَنْزَلْنَا التَّوْرٰىةَ فِيْهَا هُدًى وَّنُوْرٌ ۚ يَحْكُمُ بِهَا النَّبِيُّوْنَ الَّذِيْنَ اَسْلَمُوْا لِلَّذِيْنَ هَادُوْا وَالرَّبّٰنِيُّوْنَ وَالْاَحْبَارُ بِمَا اسْتُحْفِظُوْا مِنْ كِتٰبِ اللّٰهِ وَكَانُوْا عَلَيْهِ شُهَدَآءَ ۚ فَلَا تَخْشَوُا النَّاسَ وَاخْشَوْنِ وَلَا تَشْتَرُوْا بِاٰيٰتِيْ ثَمَنًا قَلِيْلًا ؕ وَمَنْ لَّمْ يَحْكُمْ بِمَاۤ اَنْزَلَ اللّٰهُ فَاُولٰٓئِكَ هُمُ الْكٰفِرُوْنَ ﴿٤٤﴾

४४) हामीले नै तौरात उतार्‍यौं, जसमा मार्गदर्शन र प्रकाश थियो । त्यसै अनुसार नबी र ज्ञानीहरूले जो (अल्लाहका) आज्ञाकारी थिए यहूदीमा यसै तौरात अनुसार फैसला गर्दथे । किनभने तिनीहरूलाई अल्लाहको किताबको रक्षा गर्ने आदेश थियो, र तिनीहरू यसको गवाह पनि

थिए, तसर्थ तिमी मानिसहरूसित नडराउनु र मसँग डर मान्नु र मेरो आयतहरूलाई अलिकति मूल्यमा न बेच्नु । जसले अल्लाहले प्रदान गरेको आदेशहरू बमोजिम फैसला गर्दैनन् तिनीहरूनै काफिर हुन् ।

وَكَتَبْنَا عَلَيْهِمْ فِيهَا أَنَّ النَّفْسَ بِالنَّفْسِ
وَالْعَيْنَ بِالْعَيْنِ وَالْأَنفَ بِالْأَنفِ وَالْأُذُنَ
بِالْأُذُنِ وَالسِّنَّ بِالسِّنِّ وَالْجُرُوحَ قِصَاصٌ ۚ
فَمَن تَصَدَّقَ بِهِ فَهُوَ كَفَّارَةٌ لَّهُ ۚ وَمَن
لَّمْ يَحْكُم بِمَا أَنزَلَ اللَّهُ فَأُولَٰئِكَ هُمُ
الظَّالِمُونَ ﴿٤٥﴾

४५) र हामीले तिनीहरूका लागि तौरातमा यो आदेश लेखि दिएका थियौं कि ज्यानको बदला ज्यान र आँखाको बदला आँखा र नाकको बदला नाक र कानको बदला कान र दाँतको बदला दाँत र खास-खास घाउहरूको यस्तै किसिमबाट बदला हुनेछ, तर जुन मानिसले बदला (प्रतिशोध) नलिई माफ गरिदिन्छ भने त्यो उसको लागि कफ्फारह (प्रायश्चित) हुनेछ । र जसले अल्लाहले प्रदान गरेका आदेशहरू बमोजिम निर्णय गर्दैनन् त्यस्ता मानिसहरूनै अत्याचारी हुन् ।

وَقَفَّيْنَا عَلَىٰ آثَارِهِم بِعِيسَى ابْنِ مَرْيَمَ مُصَدِّقًا
لِّمَا بَيْنَ يَدَيْهِ مِنَ التَّوْرَاةِ ۖ وَآتَيْنَاهُ الْإِنجِيلَ
فِيهِ هُدًى وَنُورٌ وَمُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ مِنَ
التَّوْرَاةِ وَهُدًى وَمَوْعِظَةً لِّلْمُتَّقِينَ ﴿٤٦﴾

४६) र हामीले यिनीहरू(यहूदीहरू) पछि ईसा बिन मरियमलाई पठायौं, जसले कि आफू भन्दा अगाडिको किताब तौरातलाई प्रमाणित गर्दथे र हामीले उनलाई इंजील प्रदान गर्‍यौ जसमा कि मार्गदर्शन र प्रकाश थियो र त्यसले पहिलाको किताब तौरातलाई प्रमाणित गर्दथ्यो र परहेजगारहरूका लागि त्यो मार्गदर्शन एवं उपदेश थियो ।

४७) र अहले इंजीललाई (ईसाई) पनि आवश्यक छ कि जो आदेश अल्लाहले इन्जीलमा जारी गरेको छ त्यसै बमोजिम निर्णयहरू गरुन् र जसले अल्लाहबाट उतारिएको आदेश अनुसार फैसला गर्दैनन्, तिनीहरू नै अवज्ञाकारी हुन् ।

وَلْيَحْكُمْ أَهْلُ الْإِنْجِيلِ بِمَا أَنْزَلَ اللَّهُ فِيهِ ۚ وَمَنْ لَمْ يَحْكُمْ بِمَا أَنْزَلَ اللَّهُ فَأُولَٰئِكَ هُمُ الْفَاسِقُونَ ﴿٤٧﴾

४८) र (हे पैगम्बर !) हामीले तपाईंलाई सत्यका साथ यो किताब (कुरआन) प्रदान गरेका छौं, जुन आफूभन्दा अगाडिका ग्रन्थहरूलाई प्रमाणित गर्दछ र ती सबैको रक्षक हो । तसर्थ यसमा जुन आदेश अल्लाहले दिएको छ, सोही अनुसार नै तिनलाई आदेश गर्नुस् र यस सत्यलाई त्यागेर उनीहरूको इच्छाको पूर्ति नगर्नु । हामीले तिमीहरूमध्येबाट प्रत्येक समुदायका एउटा विधान र एउटा तरिका (पद्धति) निर्धारित गरेका छौं र यदि अल्लाहले चाहेको भए तिमी सबैलाई एउटै समुदायमा राखिदिन्थ्यो, तर जुन आदेशहरू उसले तिमीलाई दिएको छ त्यसमा उसले तिम्रो परीक्षा गर्न चाहन्छ, तसर्थ तिमी असल कर्म गर्न छिटो गर । तिमी सबैलाई उसै छेउ फर्कि जानु पर्नेछ, तसर्थ जुन कुरामा तिमीहरू विवाद गर्ने गर्दछौ उसले तिमीलाई बताई दिने छ ।

وَأَنْزَلْنَا إِلَيْكَ الْكِتَابَ بِالْحَقِّ مُصَدِّقًا لِمَا بَيْنَ يَدَيْهِ مِنَ الْكِتَابِ وَمُهَيْمِنًا عَلَيْهِ ۖ فَاحْكُمْ بَيْنَهُمْ بِمَا أَنْزَلَ اللَّهُ ۖ وَلَا تَتَّبِعْ أَهْوَاءَهُمْ عَمَّا جَاءَكَ مِنَ الْحَقِّ ۚ لِكُلٍّ جَعَلْنَا مِنْكُمْ شِرْعَةً وَمِنْهَاجًا ۚ وَلَوْ شَاءَ اللَّهُ لَجَعَلَكُمْ أُمَّةً وَاحِدَةً وَلَٰكِنْ لِيَبْلُوَكُمْ فِي مَا آتَاكُمْ ۖ فَاسْتَبِقُوا الْخَيْرَاتِ ۚ إِلَى اللَّهِ مَرْجِعُكُمْ جَمِيعًا فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٤٨﴾

وَأَنِ احْكُم بَيْنَهُم بِمَا أَنزَلَ اللَّهُ وَلَا تَتَّبِعْ أَهْوَاءَهُمْ وَاحْذَرْهُمْ أَن يَفْتِنُوكَ عَن بَعْضِ مَا أَنزَلَ اللَّهُ إِلَيْكَ ۖ فَإِن تَوَلَّوْا فَاعْلَمْ أَنَّمَا يُرِيدُ اللَّهُ أَن يُصِيبَهُم بِبَعْضِ ذُنُوبِهِمْ ۗ وَإِنَّ كَثِيرًا مِّنَ النَّاسِ لَفَاسِقُونَ ﴿٤٩﴾

४९) तपाईंले यिनीहरूको व्यवहारमा जुन आदेश अल्लाहले गरेको छ, सोही अनुसार फैसला गर्ने गर्नुस् र तिनीहरूको चाहनाको पछाडि नजाऊ र तिनीहरूबाट सावधान रहनु कि कतै यिनीहरूले जुन आदेश अल्लाहले दिएको छ, त्यस मध्ये केहीबाट तपाईंलाई विचलित न गराई हालुन् । यदि तिनीहरूले मान्दैनन् भने जानि राख कि अल्लाह चाहन्छ कि तिनीहरूका केही गुनाह (पाप) को कारणले उनीहरूलाई दण्डित गरोस् । र, धेरै जसो मानिसहरू अटेरी गर्दछन् ।

أَفَحُكْمَ الْجَاهِلِيَّةِ يَبْغُونَ ۚ وَمَنْ أَحْسَنُ مِنَ اللَّهِ حُكْمًا لِّقَوْمٍ يُوقِنُونَ ﴿٥٠﴾

५०) के यिनीहरू फेरि अज्ञानताको युगका निर्णयहरू चाहन्छन् ?! ईमान ल्याएकाहरूका निम्ति अल्लाह बाहेक अरु कसको आदेश राम्रो हुनसक्दछ ?

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا الْيَهُودَ وَالنَّصَارَىٰ أَوْلِيَاءَ ۘ بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَإِنَّهُ مِنْهُمْ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥١﴾

५१) हे ईमान ल्याएका मानिसहरू! यहूद-नसाराहरूलाई तिमी मित्र नबनाऊ । यिनीहरू त आपसमै एक अर्काको मित्र हुन् । तिमीहरूमध्ये जसले तिनीहरूलाई मित्र बनाउँछ ऊ निःसन्देह तिनीहरूमध्ये कै हुनेछ । निःसन्देह अल्लाह अत्याचारीहरूलाई असल बाटो देखाउँदैन ।

فَتَرَى الَّذِينَ فِي قُلُوبِهِم مَّرَضٌ يُسَارِعُونَ فِيهِمْ يَقُولُونَ نَخْشَىٰ أَن تُصِيبَنَا دَائِرَةٌ ۚ فَعَسَى اللَّهُ أَن يَأْتِيَ بِالْفَتْحِ أَوْ أَمْرٍ مِّنْ عِندِهِ فَيُصْبِحُوا عَلَىٰ مَا أَسَرُّوا فِي أَنفُسِهِمْ نَادِمِينَ ﴿٥٢﴾

५२) तपाईंले हेर्नु हुनेछ कि जुन मानिसहरूको हृदयमा (कपट) अर्थात रोग छ, तिनीहरूले उनीहरूको माँझमा दौडी दौडी

जान्छन् र भन्दछन् कि हामीलाई खतरा छ यस्तो नहोस् कि हामीमाथि कुनै आपत्ति आइदेओस् । धेरै सम्भव छ कि अल्लाहले छिट्टै विजय प्रदान गरोस् वा आफूबाट कुनै निर्णय देओस् । अनि त्यसपछि यिनीहरूले आफ्ना हृदयमा लुकाएर राखेका कुरामा लज्जित हुन थाल्नेछन् ।

५३) (त्यति बेला) ईमानवालाहरूले भन्नेछन् कि के यी तिनै हुन् जसले कि अल्लाहको शपथ लिदै भन्ने गर्दथे कि हामी तिम्रो साथमा छौं । तिनीहरूका कर्महरू खेर जाने छन् र तिनीहरू घाटामा पर्नेछन् ।

وَيَقُولُ الَّذِينَ آمَنُوا أَهَٰؤُلَاءِ الَّذِينَ أَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ ۙ إِنَّهُمْ لَمَعَكُمْ ۚ حَبِطَتْ أَعْمَالُهُمْ فَأَصْبَحُوا خَاسِرِينَ ﴿٥٣﴾

५४) हे ईमान ल्याएका मानिसहरू! यदि तिमीहरूमध्ये कोही आफ्नो धर्मबाट विमुख भइहाल्छ भने अल्लाहले यस्ता मानिसहरूको सृष्टि गर्नेछ जसलाई उसले मायाँ गर्दछ र तिनीहरूले पनि अल्लाहलाई मायाँ गर्नेछन् । तिनीहरू मोमिनहरूसँग नर्मीको व्यवहार गर्नेछन् र काफिरहरूसित कठोरताको । अल्लाहको मार्गमा जिहाद (धर्म-युद्ध) गर्नेछन् र कुनै तिरस्कृत मानिसको तिरस्कारको वास्ता पनि गर्ने छैनन् । यो अल्लाहको वरदान हो उसले जसलाई चाहन्छ प्रदान गर्दछ । अल्लाह सर्वव्यापक र सर्वज्ञाता हो ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا مَن يَرْتَدَّ مِنكُمْ عَن دِينِهِ فَسَوْفَ يَأْتِي اللَّهُ بِقَوْمٍ يُحِبُّهُمْ وَيُحِبُّونَهُ أَذِلَّةٍ عَلَى الْمُؤْمِنِينَ أَعِزَّةٍ عَلَى الْكَافِرِينَ يُجَاهِدُونَ فِي سَبِيلِ اللَّهِ وَلَا يَخَافُونَ لَوْمَةَ لَائِمٍ ۚ ذَٰلِكَ فَضْلُ اللَّهِ يُؤْتِيهِ مَن يَشَاءُ ۚ وَاللَّهُ وَاسِعٌ عَلِيمٌ ﴿٥٤﴾

५५) (मुस्लिमहरू!) तिम्रा मित्र त अल्लाह स्वयम् र उसका पैगम्बर र मोमिनहरू नै हुन् जसले नमाज पढ्दछन् र जकात(दान) दिन्छन् र (अल्लाहको अगाडि) नतमस्तक हुन्छन् ।

إِنَّمَا وَلِيُّكُمُ اللَّهُ وَرَسُولُهُ وَالَّذِينَ آمَنُوا الَّذِينَ يُقِيمُونَ الصَّلَاةَ وَيُؤْتُونَ الزَّكَاةَ وَهُمْ رَاكِعُونَ ﴿٥٥﴾

५६) र जुन मानिसले अल्लाह र उसको पैगम्बर र मोमिनहरूलाई मित्र बनाउँछ उसले विश्वास गरोस् कि अल्लाहकै समूहले विजयी हुनेछ ।

وَمَنْ يَتَوَلَّ اللَّهَ وَرَسُولَهُ وَالَّذِينَ آمَنُوا فَإِنَّ حِزْبَ اللَّهِ هُمُ الْغَالِبُونَ ﴿٥٦﴾

५७) हे ईमानवालाहरू! अहले किताब र अनास्थावानहरूमध्ये त्यस्ता मानिसहरूलाई आफ्नो मित्र नबनाऊ जसले तिम्रो धर्म (आस्था) लाई हाँसो-ख्यालको कुरा ठानिराखेका छन् । यदि तिमी मोमिन हौ भने अल्लाहसँग डर मान्ने गर ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا الَّذِينَ اتَّخَذُوا دِينَكُمْ هُزُوًا وَلَعِبًا مِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ مِنْ قَبْلِكُمْ وَالْكُفَّارَ أَوْلِيَاءَ ۚ وَاتَّقُوا اللَّهَ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ﴿٥٧﴾

५८) र जब तिमीहरूले नमाजका निम्ति अजान (आव्हान) दिन्छौ, त यिनीहरूले त्यसको पनि हाँसो-ठट्टा गर्दछन् । यो यस कारणले हो कि यिनीहरू बुद्धिहीन छन् ।

وَإِذَا نَادَيْتُمْ إِلَى الصَّلَاةِ اتَّخَذُوهَا هُزُوًا وَلَعِبًا ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَا يَعْقِلُونَ ﴿٥٨﴾

५९) तपाईंले भनि दिनुस् कि हे यहूदी र ईसाईहरू! के तिमीहरूले हामीसित यसकारण शत्रुता गरिरहेका छौ कि हामीले अल्लाहमाथि र जुन (किताब) हामीलाई प्रदान गरिएको छ र जुन (किताब) अघि प्रदान गरियो, त्यसमाथि आस्था राख्दछौं ? र यस

قُلْ يَا أَهْلَ الْكِتَابِ هَلْ تَنْقِمُونَ مِنَّا إِلَّا أَنْ آمَنَّا بِاللَّهِ وَمَا أُنْزِلَ إِلَيْنَا وَمَا أُنْزِلَ مِنْ قَبْلُ وَأَنَّ أَكْثَرَكُمْ فَاسِقُونَ ﴿٥٩﴾

कारण कि तिमीहरूमध्ये धेरै जसो उद्दण्ड र उल्लंघनकारी छन् ।

قُلْ هَلْ أُنَبِّئُكُم بِشَرٍّ مِّن ذَٰلِكَ مَثُوبَةً عِندَ اللَّهِ ۚ مَن لَّعَنَهُ اللَّهُ وَغَضِبَ عَلَيْهِ وَجَعَلَ مِنْهُمُ الْقِرَدَةَ وَالْخَنَازِيرَ وَعَبَدَ الطَّاغُوتَ ۚ أُولَٰئِكَ شَرٌّ مَّكَانًا وَأَضَلُّ عَن سَوَاءِ السَّبِيلِ ٦٠

६०) भन्नुस् कि के म तिमीलाई बताउँ कि अल्लाह कहाँ यिनीहरू भन्दा पनि नराम्रो सजाय पाउने को हुन् ? ती जसलाई अल्लाहले तिरस्कृत गऱ्यो र जसमाथि क्रोधित भयो र तिनीहरूमध्ये जसलाई बाँदर र सुँगुर बनाइहाल्यो र जसले शैतानको पूजा गरे । त्यस्ताहरूको लागि एकदमै नराम्रो ठाउँ हुनेछ र यिनीहरूनै सही बाटोबाट धेरै विचलित हुनेहरू हुन् ।

وَإِذَا جَاءُوكُمْ قَالُوا آمَنَّا وَقَد دَّخَلُوا بِالْكُفْرِ وَهُمْ قَدْ خَرَجُوا بِهِ ۚ وَاللَّهُ أَعْلَمُ بِمَا كَانُوا يَكْتُمُونَ ٦١

६१) र जब तिनीहरू तिम्रो छेउमा आउँछन् त भन्दछन् कि हामीले ईमान ल्यायौं तर वास्तवमा नास्तिकताका साथ आउँछन् र त्यही नै लिएर फर्कन्छन्, तर तिनीहरूले जुन कुरा लुकाउँछन् त्यो सबै अल्लाहलाई राम्ररी थाहा छ ।

وَتَرَىٰ كَثِيرًا مِّنْهُمْ يُسَارِعُونَ فِي الْإِثْمِ وَالْعُدْوَانِ وَأَكْلِهِمُ السُّحْتَ ۚ لَبِئْسَ مَا كَانُوا يَعْمَلُونَ ٦٢

६२) तपाईंले देख्नु हुनेछ कि तिनीहरू-मध्ये धेरैले पाप र अन्याय तिर र त्याज्य कुरा (हराम) खानामा हतार गरिराखेका छन् । निःसन्देह यिनीहरूले जे गरिरहेछन् त्यो अत्यन्त नराम्रो काम हो ।

لَوْلَا يَنْهَاهُمُ الرَّبَّانِيُّونَ وَالْأَحْبَارُ عَن قَوْلِهِمُ الْإِثْمَ وَأَكْلِهِمُ السُّحْتَ ۚ لَبِئْسَ مَا كَانُوا يَصْنَعُونَ ٦٣

६३) तिनीहरूका सन्तहरूर धर्मगुरुहरूले तिनीहरूलाई भूठ कुरा गर्न र हराम खानाबाट किन मनाही

गरिराखेका छैनन् ? तिनीहरूले जे गरिराखेका छन् त्यो नि:सन्देह नराम्रो काम हो ।

६४) र यहूदीहरूले भने कि अल्लाहको हात बाँधिएको छ, (तर वास्तवमा) तिनीहरूकै हात बाँधिएको छ । र यस भनाईको कारण तिनीहरू तिरस्कृत भए बरु अल्लाहका दुवै हात खुल्ला छन् । जुन किसिमबाट र जति चाहन्छ खर्च गर्दछ । र (हे मोहम्मद स.अ. !) यो (कुरआन) जुन तिम्रो पालनकर्ताबाट तिम्रो लागि उतारिन्छ, यसको सन्दर्भमा तिनीहरूमध्ये धेरैको हठपूर्ण विद्रोह र इन्कारमा बृद्धि हुनेछ र हामीले तिनीहरूको आपसी शत्रुता र छलकपट कियामतको दिनसम्मलाई राखिदिएका छौं । यिनीहरूले जब युद्धको ज्वाला दन्काउँछन्, तब अल्लाहले त्यसलाई निभाइदिन्छ यिनीहरूले धरतीमा उपद्रव र झगडा गर्न दगुरी रहन्छन् र अल्लाहले उपद्रवीहरूलाई प्रेम गर्दैन ।

وَقَالَتِ الْيَهُودُ يَدُ اللَّهِ مَغْلُولَةٌ ۚ غُلَّتْ أَيْدِيهِمْ وَلُعِنُوا بِمَا قَالُوا ۘ بَلْ يَدَاهُ مَبْسُوطَتَانِ يُنْفِقُ كَيْفَ يَشَاءُ ۚ وَلَيَزِيدَنَّ كَثِيرًا مِنْهُمْ مَا أُنْزِلَ إِلَيْكَ مِنْ رَبِّكَ طُغْيَانًا وَكُفْرًا ۚ وَأَلْقَيْنَا بَيْنَهُمُ الْعَدَاوَةَ وَالْبَغْضَاءَ إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۚ كُلَّمَا أَوْقَدُوا نَارًا لِلْحَرْبِ أَطْفَأَهَا اللَّهُ ۚ وَيَسْعَوْنَ فِي الْأَرْضِ فَسَادًا ۚ وَاللَّهُ لَا يُحِبُّ الْمُفْسِدِينَ ﴿٦٤﴾

६५) र यदि यी अहले किताबले ईमान ल्याएको र आत्मसंयम अपनाएको भए हामीले तिनका सबै पापहरूलाई क्षमा गरिदिन्थ्यौं । र तिनीहरूलाई अवश्य आराम गरिने स्वर्गमा लान्थ्यौं ।

وَلَوْ أَنَّ أَهْلَ الْكِتَابِ آمَنُوا وَاتَّقَوْا لَكَفَّرْنَا عَنْهُمْ سَيِّئَاتِهِمْ وَلَأَدْخَلْنَاهُمْ جَنَّاتِ النَّعِيمِ ﴿٦٥﴾

وَلَوْ أَنَّهُمْ أَقَامُوا التَّوْرَاةَ وَالْإِنجِيلَ وَمَا أُنزِلَ إِلَيْهِم مِّن رَّبِّهِمْ لَأَكَلُوا مِن فَوْقِهِمْ وَمِن تَحْتِ أَرْجُلِهِم ۚ مِّنْهُمْ أُمَّةٌ مُّقْتَصِدَةٌ ۖ وَكَثِيرٌ مِّنْهُمْ سَاءَ مَا يَعْمَلُونَ ﴿٦٦﴾

६६) र यदि तिनीहरू तौरात र इन्जीललाई र जुन (किताबहरू) तिनका पालनकर्ताबाट तिनलाई प्रदान गरिएको छ तिन प्रति प्रतिवद्ध भएको भए तिनीहरूले आफ्नो माथिबाट र तलबाट पनि खाद्य सामग्रीहरू पाउने थिए, यिनीहरूमध्ये एउटा समूहले मध्यमार्ग अपनाउने वाला छन् र धेरै जसोका कर्महरू नराम्रा छन् ।

يَا أَيُّهَا الرَّسُولُ بَلِّغْ مَا أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ ۖ وَإِن لَّمْ تَفْعَلْ فَمَا بَلَّغْتَ رِسَالَتَهُ ۚ وَاللَّهُ يَعْصِمُكَ مِنَ النَّاسِ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الْكَافِرِينَ ﴿٦٧﴾

६७) हे पैगम्बर ! जुन सन्देश अल्लाहबाट तपाईंलाई प्रदान गरिएको छ, त्यसलाई सबै मानिसहरूसम्म पुऱ्याइदिनुस् यदि यस्तो नगरेमा आफ्नो रसूलको कर्तव्य पालनबाट च्यूत हुनुहुने छ र अल्लाहले मानिसहरूबाट तपाईंको रक्षा गर्नेछ । निःसन्देह अल्लाहले आस्था नराख्नेहरूलाई मार्ग-दर्शन गर्दैनन् ।

قُلْ يَا أَهْلَ الْكِتَابِ لَسْتُمْ عَلَىٰ شَيْءٍ حَتَّىٰ تُقِيمُوا التَّوْرَاةَ وَالْإِنجِيلَ وَمَا أُنزِلَ إِلَيْكُم مِّن رَّبِّكُمْ ۗ وَلَيَزِيدَنَّ كَثِيرًا مِّنْهُم مَّا أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ طُغْيَانًا وَكُفْرًا ۖ فَلَا تَأْسَ عَلَى الْقَوْمِ الْكَافِرِينَ ﴿٦٨﴾

६८) तपाईंले भनि दिनुस् कि हे अहले किताब ! जबसम्म तिमीले तौरात र इंजीललाई र जुन (किताबहरू) तिम्रो पालनकर्ताबाट तिमीहरू-लाई प्रदान गरियो, ती सबैलाई कायम राख्दैनौ, तबसम्म अलिकति पनि सत्य बाटोमा रहन सक्दैनौ र (यो कुरआन) जुन तिम्रो पालन-कर्ताबाट तिमीलाई प्रदान गरिएको छ, यसबाट तिनीहरूमध्ये धेरैको हठधर्मी र नास्तिकतामा झन् वृद्धि

हुनेछ र तपाईंले अनास्थावानहरूका लागि दुःखी नहुनुस् ।

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَالصَّابِئُونَ
وَالنَّصَارَىٰ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَعَمِلَ
صَالِحًا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦٩﴾

६९) जो कोहिले अल्लाह र आखिरतको दिनमा विश्वास गर्दछन् र असल कर्म गर्दछन् तिनीहरू चाहे मुसलमान हुन् वा यहूदी वा पारसी वा ईसाई, तिनलाई (कयामतका दिन) न त कुनै भय-त्रास हुनेछ न त तिनीहरू दुःखी नै हुने छन् ।

لَقَدْ أَخَذْنَا مِيثَاقَ بَنِي إِسْرَائِيلَ وَأَرْسَلْنَا إِلَيْهِمْ
رُسُلًا ۖ كُلَّمَا جَاءَهُمْ رَسُولٌ بِمَا لَا تَهْوَىٰ أَنْفُسُهُمْ
فَرِيقًا كَذَّبُوا وَفَرِيقًا يَقْتُلُونَ ﴿٧٠﴾

७०) हामीले निश्चयरूपले बनी इस्राईलबाट वाचा लिऔं र तिनीहरूतर्फ पैगम्बरहरू पनि पठायौं (तर) जब कुनै पैगम्बर उनीहरूसम्म यस्तो कुरा (अल्लाहको आदेश) लिएर आउँदथ्यो जुन उनी मनले रुचाउँन्नथे त उनीहरूले (पैगम्बरहरूको) एक समूहलाई झूठा भनिहाले र अर्को समूहलाई हत्या गरिदिए ।

وَحَسِبُوا أَلَّا تَكُونَ فِتْنَةٌ فَعَمُوا وَصَمُّوا ثُمَّ تَابَ
اللَّهُ عَلَيْهِمْ ثُمَّ عَمُوا وَصَمُّوا كَثِيرٌ مِنْهُمْ ۚ وَاللَّهُ
بَصِيرٌ بِمَا يَعْمَلُونَ ﴿٧١﴾

७१) र यो ठाने कि कुनै जवाफ देही हुने छैन । तसर्थ तिनीहरू अन्धा र बहिरा भइहाले । अनि अल्लाहले तिनीहरूमाथि कृपा गऱ्यो, (तर) फेरि पनि तिनीहरूमध्ये धेरै जसो अन्धा र बहिरा भइहाले । र अल्लाहले तिनीहरूका सम्पूर्ण क्रियाकलापहरूलाई हेरिराखेको छ ।

لَقَدْ كَفَرَ الَّذِينَ قَالُوا إِنَّ اللَّهَ هُوَ الْمَسِيحُ ابْنُ مَرْيَمَ ۖ
وَقَالَ الْمَسِيحُ يَا بَنِي إِسْرَائِيلَ اعْبُدُوا اللَّهَ رَبِّي
وَرَبَّكُمْ ۖ إِنَّهُ مَنْ يُشْرِكْ بِاللَّهِ فَقَدْ حَرَّمَ اللَّهُ عَلَيْهِ

७२) तिनीहरू निःसन्देह काफिर हुन् जसले भन्दछन् कि मरियमका छोरा ईसा मसीह अल्लाह हुन् जबकि मसीहले

الْجَنَّةَ وَمَأْوَاهُ النَّارُ ۖ وَمَا لِلظَّالِمِينَ مِنْ أَنصَارٍ ﴿٧٢﴾

यो भन्दै गर्दथे कि हे बनी इस्राईल ! अल्लाह कै उपसाना गर जो कि मेरो पनि पालनकर्ता हो र तिम्रो पनि । जानिराख कि जसले अल्लाहसँग साझेदार ठहराउँछ, अल्लाहले उसको लागि स्वर्गमा प्रवेश हराम (निषेध) गरिदिएको छ र उसको बासस्थान नर्क हुनेछ । र पापीहरूको कोही पनि सहयोगी हुनेछैन ।

لَّقَدْ كَفَرَ الَّذِينَ قَالُوا إِنَّ اللَّهَ ثَالِثُ ثَلَاثَةٍ ۘ وَمَا مِنْ إِلَٰهٍ إِلَّا إِلَٰهٌ وَاحِدٌ ۚ وَإِن لَّمْ يَنتَهُوا عَمَّا يَقُولُونَ لَيَمَسَّنَّ الَّذِينَ كَفَرُوا مِنْهُمْ عَذَابٌ أَلِيمٌ ﴿٧٣﴾

७३) निःसन्देह ती मानिसहरू पनि काफिर हुन् जसले भन्दछन् कि अल्लाह तीन मध्येको एक हो, जब कि वास्तवमा अल्लाह बाहेक अरु कोही उपासना योग्य छैन । यदि यी मानिसहरू यस्ता भनाई अथवा विश्वास परित्याग गर्दैनन् भने तिनीहरूमध्ये जो अवज्ञाकारी हुने छन् तिनीहरूलाई कष्टदायक सजाय अवश्य हुनेछ ।

أَفَلَا يَتُوبُونَ إِلَى اللَّهِ وَيَسْتَغْفِرُونَهُ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٧٤﴾

७४) (तसर्थ) यिनीहरूले अल्लाहको अगाडि किन नतमस्तक हुँदैनन् र किन आफ्ना त्रुटिहरूका लागि क्षमा माँग्दैनन् । अल्लाह त ठूलो क्षमा प्रदान गर्नेवाला कृपालु छ ।

مَّا الْمَسِيحُ ابْنُ مَرْيَمَ إِلَّا رَسُولٌ قَدْ خَلَتْ مِن قَبْلِهِ الرُّسُلُ وَأُمُّهُ صِدِّيقَةٌ ۖ كَانَا يَأْكُلَانِ الطَّعَامَ ۗ انظُرْ كَيْفَ نُبَيِّنُ لَهُمُ الْآيَاتِ ثُمَّ انظُرْ أَنَّىٰ يُؤْفَكُونَ ﴿٧٥﴾

७५) मसीह बिन मरियम त मात्र पैगम्बर (दूत) हुन् अरु केही होइनन् । उनीभन्दा अगाडि पनि धेरै पैगम्बरहरू गुज्री सकेका छन् र उनकी आमा अल्लाहकी सत्यनिष्ठ

आज्ञाकारी नारी थिइन् । दुवै खाना खान्थे । हेर, हामीले यिनीहरूका लागि तर्कहरू कसरी राख्दछौं । फेरि विचार गर्नुस् कि यिनीहरू कसरी त्यसलाई इन्कार गर्दछन् ।

قُلْ أَتَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَا يَمْلِكُ لَكُمْ ضَرًّا وَلَا نَفْعًا ۚ وَاللَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٧٦﴾

७६) भनिदिनुस् कि तिमीहरू अल्लाह बाहेक त्यस्ता कुराको पूजा गर्दछौ जोसँग तिमीलाई नाफा र नोक्सानी पुऱ्याउने कुनै अधिकारै छैन र अल्लाह नै (सबै कुरा) सुन्दछ र जान्दछ ।

قُلْ يَا أَهْلَ الْكِتَابِ لَا تَغْلُوا فِي دِينِكُمْ غَيْرَ الْحَقِّ وَلَا تَتَّبِعُوا أَهْوَاءَ قَوْمٍ قَدْ ضَلُّوا مِن قَبْلُ وَأَضَلُّوا كَثِيرًا وَضَلُّوا عَن سَوَاءِ السَّبِيلِ ﴿٧٧﴾

७७) भनिदिनुस् कि हे अहले किताब ! आफ्नो धर्मको बारेमा अनाहक थपघट गर्ने नगर र यस्ता मानिसहरूको इच्छापूर्ति पछि नलाग जो स्वयम् पनि अघिनै मार्ग विचलित भए र अरु धेरैलाई पनि पथ विचलित गरिसकेका छन् । र सही बाटोलाई छोडि सकेका छन् ।

لُعِنَ الَّذِينَ كَفَرُوا مِن بَنِي إِسْرَائِيلَ عَلَىٰ لِسَانِ دَاوُودَ وَعِيسَى ابْنِ مَرْيَمَ ۚ ذَٰلِكَ بِمَا عَصَوا وَّكَانُوا يَعْتَدُونَ ﴿٧٨﴾

७८) बनी इस्राइल मध्येबाट जुन मानिसहरू काफिर भइहाले, तिनीहरूमाथि दाऊद र ईसा बिन मरियमद्वारा धिक्कार गरियो, यो यस कारणले कि तिनीहरूले आज्ञा उल्लंघन गर्दथे र सीमा नाघि सकेका थिए ।

كَانُوا لَا يَتَنَاهَوْنَ عَن مُّنكَرٍ فَعَلُوهُ ۚ لَبِئْسَ مَا كَانُوا يَفْعَلُونَ ﴿٧٩﴾

७९) र नराम्रा कामहरूबाट जुनकि तिनीहरूले गर्दथे, रोक्दैनथे । निःसन्देह तिनीहरूले दुष्कर्म गर्दथे ।

८०) तपाईंले तिनीहरूमध्ये धेरैलाई देख्नु हुनेछ कि तिनीहरू काफिरहरूसँग मैत्री सम्बन्ध राख्दछन् । तिनीहरूले जे जति आफ्नो निम्ति अगाडि पठाएका छन् नराम्रो छ, अल्लाह तिनीहरूसँग अप्रसन्न भयो, र तिनीहरू सधैं सजाय भोगी राख्ने छन् ।

تَرٰى كَثِيْرًا مِّنْهُمْ يَتَوَلَّوْنَ الَّذِيْنَ كَفَرُوْا ؕ لَبِئْسَ مَا قَدَّمَتْ لَهُمْ اَنْفُسُهُمْ اَنْ سَخِطَ اللّٰهُ عَلَيْهِمْ وَ فِي الْعَذَابِ هُمْ خٰلِدُوْنَ ﴿۸۰﴾

८१) यदि तिनीहरूले अल्लाहमाथि र उसको पैगम्बर र जुन किताब तिनीहरूलाई प्रदान गरिएका थिए तिनीमाथि विश्वास गरेको भए, तिनीहरूलाई आफ्ना मित्र बनाउने थिएनन्, तर तिनीहरूमध्ये धेरै दुष्कर्मी छन् ।

وَلَوْ كَانُوْا يُؤْمِنُوْنَ بِاللّٰهِ وَالنَّبِيِّ وَمَاۤ اُنْزِلَ اِلَيْهِ مَا اتَّخَذُوْهُمْ اَوْلِيَآءَ وَلٰكِنَّ كَثِيْرًا مِّنْهُمْ فٰسِقُوْنَ ﴿۸۱﴾

८२) (हे पैगम्बर,) तपाईंले मोमिनहरूसँग धेरै शत्रुता गर्ने यहूदी र मुशिरकहरूलाई पाउनु हुनेछ र मित्रताको दृष्टिकोणले मोमिनहरूको नजिकमा ती मानिसहरूलाई पाउनु हुनेछ जसले आफूलाई "नसारा (ईसाई)" भन्छन् । यो यसकारणले हो कि तिनीहरूमा विद्वान पनि छन् र धर्म विद् पनि र तिनीहरूले घमण्ड गर्दैनन् ।

لَتَجِدَنَّ اَشَدَّ النَّاسِ عَدَاوَةً لِّلَّذِيْنَ اٰمَنُوا الْيَهُوْدَ وَالَّذِيْنَ اَشْرَكُوْا ۚ وَلَتَجِدَنَّ اَقْرَبَهُمْ مَّوَدَّةً لِّلَّذِيْنَ اٰمَنُوا الَّذِيْنَ قَالُوْۤا اِنَّا نَصٰرٰى ؕ ذٰلِكَ بِاَنَّ مِنْهُمْ قِسِّيْسِيْنَ وَرُهْبَانًا وَّاَنَّهُمْ لَا يَسْتَكْبِرُوْنَ ﴿۸۲﴾

८३) जब उनीहरू पैगम्बरमाथि अवतरित (भएको किताबका कुराहरू) सुन्दछन् तब तिमीले देख्ने छौ कि उनीहरूको आँखा आँसुले भरिएका लाग्दछन् ।

وَاِذَا سَمِعُوْا مَاۤ اُنْزِلَ اِلَى الرَّسُوْلِ تَرٰۤى اَعْيُنَهُمْ تَفِيْضُ مِنَ الدَّمْعِ مِمَّا عَرَفُوْا مِنَ الْحَقِّ ۚ يَقُوْلُوْنَ رَبَّنَاۤ اٰمَنَّا فَاكْتُبْنَا مَعَ الشّٰهِدِيْنَ ﴿۸۳﴾

यसकारण कि उनीहरू सत्यको पहिचान गरिसके । उनीहरू भन्दछन् “हे हाम्रा पालनकर्ता ! हामीले ईमान ल्यायौं ।” अतः तपाईं हाम्रा नाम पनि गवाही दिनेवालाहरूको नाम सित लेखिहाल्नुस् ।

८४) र हामी अल्लाह र जो-जति सत्य हाम्रो नजिक पुगिसकेको छ त्यसमा विश्वास किन नगरौं जब कि हामीलाई आशा छ कि हाम्रो पालनकर्ताले हामीलाई संयमीहरूको साथ (स्वर्गमा) प्रवेश गराउने छ ।

وَمَا لَنَا لَا نُؤْمِنُ بِاللَّهِ وَمَا جَاءَنَا مِنَ الْحَقِّ وَنَطْمَعُ
أَنْ يُدْخِلَنَا رَبُّنَا مَعَ الْقَوْمِ الصَّالِحِينَ ﴿٨٤﴾

८५) त यसर्थ अल्लाहले उनीहरूलाई उनको यस कथनको फलस्वरूप यस्तो बगैंचा प्रदान गर्ने छ जसका मुनि नहरहरू बगिरहनेछन्, जसमा उनीहरू सधैं बास गर्ने छन् । र यो नै सत्यकर्मीहरूको बदला हो ।

فَأَثَابَهُمُ اللَّهُ بِمَا قَالُوا جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا
الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ وَذَٰلِكَ جَزَاءُ الْمُحْسِنِينَ ﴿٨٥﴾

८६) र जसले इन्कार गर्‍यो र हाम्रो आयतहरूलाई असत्य ठान्यो । उनीहरू नर्कको आगोमा पर्नेवाला छन् ।

وَالَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا أُولَٰئِكَ
أَصْحَابُ الْجَحِيمِ ﴿٨٦﴾

८७) मोमिनहरू हो ! जुन पवित्र कुराहरू तिम्रो लागि अल्लाहले हलाल बनाएको छ तिनलाई त्याज्य नबनाऊ र सीमा ननाघ किनभने सीमा नाघ्नेलाई अल्लाहले मन पराउँदैन ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تُحَرِّمُوا طَيِّبَاتِ مَا
أَحَلَّ اللَّهُ لَكُمْ وَلَا تَعْتَدُوا ۚ إِنَّ اللَّهَ لَا يُحِبُّ
الْمُعْتَدِينَ ﴿٨٧﴾

८८) र अल्लाहले जुन कुराहरू तिमीलाई प्रदान गरेको छ, ती मध्ये हलाल र

وَكُلُوا مِمَّا رَزَقَكُمُ اللَّهُ حَلَالًا طَيِّبًا ۚ وَاتَّقُوا اللَّهَ
الَّذِي أَنْتُمْ بِهِ مُؤْمِنُونَ ﴿٨٨﴾

राम्रो रोजी ग्रहण गर र अल्लाहसित डर मान्ने गर जसमा तिम्रो विश्वास छ ।

८९) अल्लाह तिम्रो अज्ञानपूर्ण कसमहरूको लागि तिमीलाई समात्ने छैन, तर जानि-जानि ठोस शपथ खाए बापत समात्ने छ । त्यसको कफ्फारा (त्यस्तोशपथको प्रयश्चित) स्वरूप दश जना गरीब व्यक्तिलाई औसत खालको खाना खुवाऊ जुन तिमीले आफ्ना सन्तानहरूलाई ख्वाउदछौ वा तिनीहरूलाई लुगा फाटा देऊ वा एउटा दास वा दासीलाई मुक्त गर र जो यी कुनै पनि गर्न समर्थ हुँदैन, उसले तीन दिनको रोजा राख्नु पर्दछ । यो तिम्रा शपथहरूको प्रायश्चित हो, कि जब तिमी शपथ लिन्छौ त आफ्ना शपथहरूको रक्षा गर । यस प्रकार अल्लाहले तिमीलाई आफ्ना आयतहरू वर्णन गर्दछ ताकि तिमी आभार प्रकट गर ।

لَا يُؤَاخِذُكُمُ اللّٰهُ بِاللَّغْوِ فِيْٓ اَيْمَانِكُمْ وَلٰكِنْ يُّؤَاخِذُكُمْ بِمَا عَقَّدْتُّمُ الْاَيْمَانَ ۚ فَكَفَّارَتُهٗٓ اِطْعَامُ عَشَرَةِ مَسٰكِيْنَ مِنْ اَوْسَطِ مَا تُطْعِمُوْنَ اَهْلِيْكُمْ اَوْ كِسْوَتُهُمْ اَوْ تَحْرِيْرُ رَقَبَةٍ ۗ فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ ثَلٰثَةِ اَيَّامٍ ۗ ذٰلِكَ كَفَّارَةُ اَيْمَانِكُمْ اِذَا حَلَفْتُمْ ۗ وَاحْفَظُوْٓا اَيْمَانَكُمْ ۗ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٨٩﴾

९०) हे इमानवालाहरू! मदिरा, जुआ बलिस्थान र शगुण पासा यी सबै अपवित्र र शैतानी कुराहरूमध्येका हुन् तसर्थ यिनीबाट टाढा रहनु ताकि मुक्ति प्राप्त गर्न सक ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنَّمَا الْخَمْرُ وَالْمَيْسِرُ وَالْاَنْصَابُ وَالْاَزْلَامُ رِجْسٌ مِّنْ عَمَلِ الشَّيْطٰنِ فَاجْتَنِبُوْهُ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٩٠﴾

९१) शैतान त यो चाहन्छ कि रक्सी र जुआको माध्यमबाट तिमीहरू बीच शत्रुता र बैरभावको सृजना

اِنَّمَا يُرِيْدُ الشَّيْطٰنُ اَنْ يُّوْقِعَ بَيْنَكُمُ الْعَدَاوَةَ وَالْبَغْضَآءَ فِي الْخَمْرِ وَالْمَيْسِرِ وَيَصُدَّكُمْ عَنْ ذِكْرِ اللّٰهِ وَعَنِ الصَّلٰوةِ ۚ فَهَلْ اَنْتُمْ مُّنْتَهُوْنَ ﴿٩١﴾

गरिहालोस् र तिमीलाई अल्लाहको स्मरण र नमाजबाट रोकिदेओस् । यसकारण अहिले पनि (यी कर्महरूबाट) अलग रहने गर ।

९२) र तिमी अल्लाहको आदेश पालन गर्ने गर र रसूलको अनुशरण गर्ने गर र सतर्क भइराख यदि अनुहार फेर्छौ त जानी राख कि हाम्रा पैगम्बरको जिम्मामा (सन्देश) खुलस्त रूपमा पुऱ्याउनु मात्र हो ।

وَاَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ وَاحْذَرُوْا ۚ فَاِنْ تَوَلَّيْتُمْ فَاعْلَمُوْٓا اَنَّمَا عَلٰى رَسُوْلِنَا الْبَلٰغُ الْمُبِيْنُ ﴿٩٢﴾

९३) जुन मानिसहरू आस्थावान छन् र असल काम गर्दछन् तिनीहरूमाथि यस्ता कुराहरूको पाप लाग्दैन कि तिनीहरू खाई पिई रहेका छन् जब कि तिनीहरू आत्म संयम र आस्था राख्दछन् र सतकर्म गर्दछन् । र त्यस पश्चात पुनः संयमको साथ विश्वास गर्दछन्, भने पुनः संयमको असल कामहरू गरिरहन्छन् । अल्लाह यस्ता सतकर्मीहरूलाई मायाँ गर्दछ ।

لَيْسَ عَلَى الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ جُنَاحٌ فِيْمَا طَعِمُوْٓا اِذَا مَا اتَّقَوْا وَّاٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ثُمَّ اتَّقَوْا وَّاٰمَنُوْا ثُمَّ اتَّقَوْا وَّاَحْسَنُوْا ۗ وَاللّٰهُ يُحِبُّ الْمُحْسِنِيْنَ ﴿٩٣﴾

९४) हे मोमिनहरू! अल्लाह तिम्रो परीक्षा सामान्य अवस्थामा शिकारबाट लिनेछ जुनकि तिमीले हातले अथवा भालाले (अस्त्र) गर्दछौ (अर्थात् एहरामको अवस्थामा शिकारको निषेधबाट) जसबाट अल्लाहले थाहा पाओस् कि अदृश्य रूपमा उससँग को डराउँछ । तसर्थ जसले त्यसपछि सीमा उल्लंघन

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَيَبْلُوَنَّكُمُ اللّٰهُ بِشَيْءٍ مِّنَ الصَّيْدِ تَنَالُهٗٓ اَيْدِيْكُمْ وَرِمَاحُكُمْ لِيَعْلَمَ اللّٰهُ مَنْ يَّخَافُهٗ بِالْغَيْبِ ۚ فَمَنِ اعْتَدٰى بَعْدَ ذٰلِكَ فَلَهٗ عَذَابٌ اَلِيْمٌ ﴿٩٤﴾

गर्नेछ त्यसको निम्ति कष्ट दायक सजाय छ ।

९५) हे मोमिनहरू ! जब तिमी एहरामको अवस्थामा हुन्छौ त्यतिखेर शिकार नगर्नु र तिमीहरूमध्ये जसले जानि जानि (त्यसलाई) हत्या गर्छ भने उसमाथि त्यसको क्षतिपूर्ति त्यस्तै खालको एउटा चौपया हुनेछ । जसलाई तिमीहरूमध्ये दुईजना न्यायप्रिय फैसला गरिदिन्छन् । त्यस्तो पशुलाई कअ्बासम्म (मक्का) पुऱ्याइ कुर्बानी गरियोस् वा खानेकुरा गरीबहरूलाई दिइहालोस् अथवा त्यो बराबर रोजा राखोस् ताकि आफ्नो कर्मको स्वाद चाख्न सकोस् र विगतमा भएका कुरालाई अल्लाहले माफी गरेकोछ र यदि कसैले पुनः यस्तो काम गर्नेछ भने अल्लाह उसलाई दण्डित गर्नेछ र अल्लाह सर्वशक्तिमान र सजाय दिने वाला छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَقْتُلُواْ ٱلصَّيْدَ وَأَنتُمْ حُرُمٌ ۚ وَمَن قَتَلَهُۥ مِنكُم مُّتَعَمِّدًا فَجَزَآءٌ مِّثْلُ مَا قَتَلَ مِنَ ٱلنَّعَمِ يَحْكُمُ بِهِۦ ذَوَا عَدْلٍ مِّنكُمْ هَدْيًۢا بَٰلِغَ ٱلْكَعْبَةِ أَوْ كَفَّٰرَةٌ طَعَامُ مَسَٰكِينَ أَوْ عَدْلُ ذَٰلِكَ صِيَامًا لِّيَذُوقَ وَبَالَ أَمْرِهِۦ ۗ عَفَا ٱللَّهُ عَمَّا سَلَفَ ۚ وَمَنْ عَادَ فَيَنتَقِمُ ٱللَّهُ مِنْهُ ۗ وَٱللَّهُ عَزِيزٌ ذُو ٱنتِقَامٍ ﴿٩٥﴾

९६) र तिम्रो निम्ति समुद्री जीवको शिकार गर्नु र त्यसलाई खानु हलाल गरिएको छ । तिम्रो प्रयोगको लागि र यात्रीहरूको फाइदाका लागि तर एहरामको अवस्थामा रहेसम्म सुख्खा ठाउँको शिकार तिम्रो निम्ति हराम गरिएको छ र अल्लाहसँग जसकहाँ एकत्रित गरिनेछौ, डर मान्ने गर ।

أُحِلَّ لَكُمْ صَيْدُ ٱلْبَحْرِ وَطَعَامُهُۥ مَتَٰعًا لَّكُمْ وَلِلسَّيَّارَةِ ۖ وَحُرِّمَ عَلَيْكُمْ صَيْدُ ٱلْبَرِّ مَا دُمْتُمْ حُرُمًا ۗ وَٱتَّقُواْ ٱللَّهَ ٱلَّذِىٓ إِلَيْهِ تُحْشَرُونَ ﴿٩٦﴾

جَعَلَ اللّٰهُ الْكَعْبَةَ الْبَيْتَ الْحَرَامَ قِيٰمًا لِّلنَّاسِ وَالشَّهْرَ الْحَرَامَ وَالْهَدْيَ وَالْقَلَآئِدَ ۭ ذٰلِكَ لِتَعْلَمُوْٓا اَنَّ اللّٰهَ يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ وَاَنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٩٧﴾

९७) अल्लाहले पवित्र घर कअ्बालाई सम्मानित स्थान बनाउनुको साथै मानिसहरूका निम्ति सहयोग र साधनका लागि माध्यम बनाएको छ र पवित्र महिनाहरूलाई पनि र कुर्बानीको जनावरहरूलाई पनि जसका घाँटीहरूमा पट्टाहरू बाँधिएका हुन्छन् यो यसकारणले हो कि तिमीले जानिहाल कि जे-जति आकाशहरूमा छन् र जे-जति पृथ्वीमा छन् अल्लाहलाई सबैको ज्ञान छ, र यो पनि कि अल्लाह हरेक कुराको ज्ञाता छ ।

اِعْلَمُوْٓا اَنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ وَاَنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٩٨﴾

९८) तिमी जानि राख कि अल्लाह कठोर सजाय दिनेवाला छ र यो (पनि) कि अल्लाह ठूलो क्षमादाता र कृपालु छ ।

مَا عَلَى الرَّسُوْلِ اِلَّا الْبَلٰغُ ۭ وَاللّٰهُ يَعْلَمُ مَا تُبْدُوْنَ وَمَا تَكْتُمُوْنَ ﴿٩٩﴾

९९) पैगम्बरहरूको जिम्मामा त मात्र आदेश पुऱ्याउनु हो र जे-जति तिमीले प्रकट गर्दछौ र लुकाउँदछौ, अल्लाहलाई सबै थाहा छ ।

قُلْ لَّا يَسْتَوِي الْخَبِيْثُ وَالطَّيِّبُ وَلَوْ اَعْجَبَكَ كَثْرَةُ الْخَبِيْثِ ۚ فَاتَّقُوا اللّٰهَ يٰٓاُولِي الْاَلْبَابِ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿١٠٠﴾

१००) तपाई भनिदिनुस् कि अपवित्र र पवित्र कुराहरू बराबर हुँदैनन् यद्यपि अपवित्र कुराहरूको बाहुल्य तिमीलाई आर्कषित पार्न सक्छ । तसर्थ हे विवेक भएका मानिसहरू! अल्लाहसँग डर मान्ने गर ताकि सफलता प्राप्त गर्न सक ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَسْـَٔــلُوْا عَنْ اَشْيَاۗءَ اِنْ

१०१) मोमिनहरू हो ! यस्ता कुराहरूको

تُبۡدَ لَكُمۡ تَسُؤۡكُمۡۚ وَإِن تَسۡـَٔلُواْ عَنۡهَا حِينَ يُنَزَّلُ ٱلۡقُرۡءَانُ تُبۡدَ لَكُمۡ عَفَا ٱللَّهُ عَنۡهَاۗ وَٱللَّهُ غَفُورٌ حَلِيمٞ ١٠١

प्रश्न न गर जसको सत्यता यदि तिमीलाई प्रकट गर्ने हो भने तिमीलाई नराम्रो लाग्नेछ र यदि कुरआन अवतरण हुने समयमा यस्ता कुरा सोध्छौ भने तिमीलाई प्रकट पनि गरिने छन्। पहिला सोधिएका प्रश्नहरू अल्लाहले माफ गरेको छ र अल्लाह ठूलो क्षमादाता, धेरै सहनशील छ।

قَدۡ سَأَلَهَا قَوۡمٞ مِّن قَبۡلِكُمۡ ثُمَّ أَصۡبَحُواْ بِهَا كَٰفِرِينَ ١٠٢

१०२) यस्ता कुराहरूबारे तिमीभन्दा अघिका मानिसहरूले पनि सोधेका थिए, फेरि तिनीहरूले यसलाई नकारी हाले।

مَا جَعَلَ ٱللَّهُ مِنۢ بَحِيرَةٖ وَلَا سَآئِبَةٖ وَلَا وَصِيلَةٖ وَلَا حَامٖ وَلَٰكِنَّ ٱلَّذِينَ كَفَرُواْ يَفۡتَرُونَ عَلَى ٱللَّهِ ٱلۡكَذِبَۖ وَأَكۡثَرُهُمۡ لَا يَعۡقِلُونَ ١٠٣

१०३) अल्लाह न त "बहीरा:" ठहराएको छ र नत 'सायबा' र नत 'वसीला' र 'हाम' (अरबको बहुते बद्दूहरूविभिन्न प्रकारका नाम राखी आफ्ना देवताको नाममा जनावर राखेका थिए) बरु काफिरहरू अल्लाह माथि झूठा आरोप लगाउँछन् र यिनीहरूमध्ये धेरै जसो बुद्धिहीन छन्।

وَإِذَا قِيلَ لَهُمۡ تَعَالَوۡاْ إِلَىٰ مَآ أَنزَلَ ٱللَّهُ وَإِلَى ٱلرَّسُولِ قَالُواْ حَسۡبُنَا مَا وَجَدۡنَا عَلَيۡهِ ءَابَآءَنَآۚ أَوَلَوۡ كَانَ ءَابَآؤُهُمۡ لَا يَعۡلَمُونَ شَيۡـٔٗا وَلَا يَهۡتَدُونَ ١٠٤

१०४) र जब यिनीहरूसित भनिन्छ कि जुन आदेश अल्लाहले उतारेको छ त्यसतिर र रसूल (स.) तिर प्रवृत्त होऊ त भन्दछन् कि जुन मार्गमा हामीले आफ्ना पूर्वजहरूलाई पाएका छौं, त्यही नै हामीलाई प्रयाप्त छ। चाहे तिनका पूर्वज अज्ञानी र गलत मार्ग मै किन नहोऊन्।

१०५) हे ईमानवालाहरू ! आफ्ना चिन्ता गर, यदि तिमी सही बाटोमा छौ भने, कुनै पथभ्रष्ट मानिसबाट तिम्रो केही नोक्सान छैन । तिमी सबैलाई फर्केर अल्लाह नजिकै पुग्नु छ । उस बेला त्यसले तिमीलाई तिम्रा सम्पूर्ण क्रियाकलापहरू बताई दिनेछ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ عَلَيْكُمْ أَنفُسَكُمْ ۖ لَا يَضُرُّكُم مَّن ضَلَّ إِذَا ٱهْتَدَيْتُمْ ۚ إِلَى ٱللَّهِ مَرْجِعُكُمْ جَمِيعًا فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٠٥﴾

१०६) हे ईमानवालाहरू ! जब तिमीहरूमध्ये कसैको मृत्यु नजिक आइपुग्छ र वसीयत (इच्छापत्र) गर्दा धार्मिक स्वभाव भएका मध्ये दुई जना मानिसहरूलाई साक्षी राख, वा तिमीहरू बाहेक अरु दुई जनालाई यदि तिमी यात्रा गरिराखेका छौ र तिम्रो मृत्यु नजिक आईपुग्छ भने ती दुवैलाई शंकाको समय नमाज पछि रोकेर अल्लाहको शपथ खुवाउनु कि तिनीहरूले साक्ष्यको बदला कुनै सांसारिक लाभ लिने छैनन्, यद्यपि कोही नजिकको नातेदार नै किन नहोस् र तिनले अल्लाहको कुरालाई लुकाउने पनि छैनन् । यदि यस्तो गरेमा ठूलो पापी हुनेछन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ شَهَٰدَةُ بَيْنِكُمْ إِذَا حَضَرَ أَحَدَكُمُ ٱلْمَوْتُ حِينَ ٱلْوَصِيَّةِ ٱثْنَانِ ذَوَا عَدْلٍ مِّنكُمْ أَوْ ءَاخَرَانِ مِنْ غَيْرِكُمْ إِنْ أَنتُمْ ضَرَبْتُمْ فِى ٱلْأَرْضِ فَأَصَٰبَتْكُم مُّصِيبَةُ ٱلْمَوْتِ ۚ تَحْبِسُونَهُمَا مِنۢ بَعْدِ ٱلصَّلَوٰةِ فَيُقْسِمَانِ بِٱللَّهِ إِنِ ٱرْتَبْتُمْ لَا نَشْتَرِى بِهِۦ ثَمَنًا وَلَوْ كَانَ ذَا قُرْبَىٰ ۙ وَلَا نَكْتُمُ شَهَٰدَةَ ٱللَّهِ إِنَّآ إِذًا لَّمِنَ ٱلْءَاثِمِينَ ﴿١٠٦﴾

१०७) फेरि यदि यो थाहा हुन्छ कि यी दुवैले कुनै अपराध गरेका छन् भने तिनीहरू जुन मानिसहरूको अधिकार हनन् गर्न खोजेका थिए, तिनीहरूमध्ये दुई जना तिनीहरूको

فَإِنْ عُثِرَ عَلَىٰٓ أَنَّهُمَا ٱسْتَحَقَّآ إِثْمًا فَـَٔاخَرَانِ يَقُومَانِ مَقَامَهُمَا مِنَ ٱلَّذِينَ ٱسْتَحَقَّ عَلَيْهِمُ ٱلْأَوْلَيَٰنِ فَيُقْسِمَانِ بِٱللَّهِ لَشَهَٰدَتُنَآ أَحَقُّ مِن شَهَٰدَتِهِمَا وَمَا ٱعْتَدَيْنَآ إِنَّآ إِذًا لَّمِنَ ٱلظَّٰلِمِينَ ﴿١٠٧﴾

ठाउँमा साक्षी बनुन्, जो कि (मृतक) नजिकको सम्बन्ध राख्दछन्, अनि त्यस पछि तिनीहरू अल्लाहको शपथ लिनु पर्नेछ कि तिनीहरूको गवाही उनीहरूको शपथ भन्दा बढी सत्य छ र हामीले कुनै किसिमबाट सत्यताको उल्लंघन गरेका छैनौं, यदि यस्तो गरेको भए हामी अन्यायी हुने छौं ।

१०८) यसबाट धेरै सम्भावना छ कि यिनीहरू वास्तविकतालाई ठीक ढंगले स्पष्ट गरुन् वा यस कुरोसित भयभीत होऊन् कि हाम्रा शपथहरू यिनीहरूको शपथ लिए पछि उल्टीने छन् । र अल्लाहसित डर र सुन र अल्लाह अवज्ञाकारी व्यक्तिहरूलाई मार्ग-दर्शन गर्दैन ।

ذٰلِكَ اَدْنٰۤى اَنْ يَّاْتُوْا بِالشَّهَادَةِ عَلٰى وَجْهِهَاۤ
اَوْ يَخَافُوْۤا اَنْ تُرَدَّ اَيْمَانٌۢ بَعْدَ اَيْمَانِهِمْ ؕ وَاتَّقُوا اللّٰهَ
وَاسْمَعُوْا ؕ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ﴿١٠٨﴾

१०९) जुन दिन अल्लाहले सबै पैगम्बर-हरूलाई जम्मा गर्ने छ, फेरि तिनीहरूसित सोध्ने छ कि तिमीलाई के जवाफ प्राप्त भएको थियो र तिनीहरूले भन्ने छन् कि हामीलाई केही पनि थाहा छैन । निःसन्देह तिमी नै परोक्षका कुरा जान्ने अन्तर्यामी छौ ।

يَوْمَ يَجْمَعُ اللّٰهُ الرُّسُلَ فَيَقُوْلُ مَاذَاۤ اُجِبْتُمْ ؕ قَالُوْا
لَا عِلْمَ لَنَا ؕ اِنَّكَ اَنْتَ عَلَّامُ الْغُيُوْبِ ﴿١٠٩﴾

११०) अल्लाहले भन्ने छ कि हे मरियमका पुत्र ईसा(अलै.) । मेरा ती कृपाहरू यादगर, जुन तिमी र तिम्री आमा माथि गरिएको हो ।

اِذْ قَالَ اللّٰهُ يٰعِيْسَى ابْنَ مَرْيَمَ اذْكُرْ نِعْمَتِىْ عَلَيْكَ
وَعَلٰى وَالِدَتِكَ ۘ اِذْ اَيَّدْتُّكَ بِرُوْحِ الْقُدُسِ ۟
تُكَلِّمُ النَّاسَ فِى الْمَهْدِ وَكَهْلًا ۚ وَاِذْ عَلَّمْتُكَ الْكِتٰبَ
وَالْحِكْمَةَ وَالتَّوْرٰىةَ وَالْاِنْجِيْلَ ۚ وَاِذْ تَخْلُقُ مِنَ

الطِّيْنِ كَهَيْـَٔةِ الطَّيْرِ بِاِذْنِيْ فَتَنْفُخُ فِيْهَا فَتَكُوْنُ طَيْرًا بِاِذْنِيْ وَتُبْرِئُ الْاَكْمَهَ وَالْاَبْرَصَ بِاِذْنِيْ وَاِذْ تُخْرِجُ الْمَوْتٰى بِاِذْنِيْ وَاِذْ كَفَفْتُ بَنِيْٓ اِسْرَآءِيْلَ عَنْكَ اِذْ جِئْتَهُمْ بِالْبَيِّنٰتِ فَقَالَ الَّذِيْنَ كَفَرُوْا مِنْهُمْ اِنْ هٰذَآ اِلَّا سِحْرٌ مُّبِيْنٌ ﴿١١٠﴾

जब मैले पवित्र आत्मा (जिब्रील) द्वारा तिमीलाई मद्दत पुऱ्याएँ (जसबाट) तिमी (बाल्य अवस्थामा) आमाको गोदीबाटै र अधेड उमेरमा मानिसहरूसँग कुराकानी गर्थ्यौ र जब मैले तिमीलाई किताब र बुद्धिमत्ता र तौरात र इंजीलको तालिम दिएँ र जब तिमीले मेरो आदेशबाट माटोको चाराको रूप बनाई त्यसमा फुँकेपछि जीवित चरा बन्दथ्यो । र, जब जन्मजात अन्धाहरू र कुष्टरोग सेता दाग भएका मानिसहरूलाई मेरो आदेशबाट निको पार्थ्यौ र जब तिमी मुर्दाहरूलाई मेरो आज्ञाले (चिहानहरूबाट) निकालेर उभ्याई हाल्दथ्यौ र जब मैले बनी इस्राईललाई तिमीमाथि अत्याचार गर्नबाट रोकिहालें, जब तिमी तिनीहरू छेउ तर्कहरूलिएर आएका थियौ फेरि तिनीहरूमध्ये जो काफिर थिए, तिनीहरूले भन्न थाले कि यो त खुल्ला जादू बाहेक अरु केही होइन ।

وَاِذْ اَوْحَيْتُ اِلَى الْحَوَارِيّٖنَ اَنْ اٰمِنُوْا بِيْ وَبِرَسُوْلِيْ قَالُوْٓا اٰمَنَّا وَاشْهَدْ بِاَنَّنَا مُسْلِمُوْنَ ﴿١١١﴾

१११) र जब मैले हवारीहरूलाई आदेश पठाएँ कि ममाथि र मेरा पैगम्बरमाथि आस्था राख । तिनीहरूले भन्न थाले कि हामीले ईमान ल्यायौं र तपाई साक्षी रहनुस् कि हामी आज्ञाकारी छौं ।

إِذْ قَالَ الْحَوَارِيُّونَ يَا عِيسَى ابْنَ مَرْيَمَ هَلْ يَسْتَطِيعُ رَبُّكَ أَنْ يُنَزِّلَ عَلَيْنَا مَائِدَةً مِنَ السَّمَاءِ ۖ قَالَ اتَّقُوا اللَّهَ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ﴿١١٢﴾

११२) त्यो समय स्मरणयोग्य छ जब हवारीहरूले भने: कि हे ईसा बिन मरियम ! के तपाईको रबले आकाशबाट हाम्रो लागि पकाएको विभिन्न प्रकारका भोजन पठाउन सक्छ ? उनले भने तिमीमा ईमान छ भने अल्लाहसित डर ।

قَالُوا نُرِيدُ أَنْ نَأْكُلَ مِنْهَا وَتَطْمَئِنَّ قُلُوبُنَا وَنَعْلَمَ أَنْ قَدْ صَدَقْتَنَا وَنَكُونَ عَلَيْهَا مِنَ الشَّاهِدِينَ ﴿١١٣﴾

११३) तिनीहरूले भने कि हाम्रो यो इच्छा छ कि हामीले त्यसबाट खाऔं र हाम्रो मनको सन्तुष्टि प्राप्त गरौं र हाम्रो यो विश्वास बढोस् कि तपाई हामीसित साँचो भन्नु भएको छ र हामी साक्षी हुन सकौं ।

قَالَ عِيسَى ابْنُ مَرْيَمَ اللَّهُمَّ رَبَّنَا أَنْزِلْ عَلَيْنَا مَائِدَةً مِنَ السَّمَاءِ تَكُونُ لَنَا عِيدًا لِأَوَّلِنَا وَآخِرِنَا وَآيَةً مِنْكَ ۖ وَارْزُقْنَا وَأَنْتَ خَيْرُ الرَّازِقِينَ ﴿١١٤﴾

११४) (अनि) ईसा बिन मरियमले प्रार्थना गरे कि हे मेरा पालनकर्ता ! हामीलाई आकाशबाट खाना प्रदान गर, जसले कि हाम्रो निम्ति र हाम्रा अघि र पछि (सबैका) लागि त्यो खुशीको कुरा भइहालोस् र तिम्रो तर्फबाट एउटा निशानी पनि होस् ! र हामीलाई जीविका प्रदान गर, तिमी सबभन्दा राम्रो आहार दाता हौ ।

قَالَ اللَّهُ إِنِّي مُنَزِّلُهَا عَلَيْكُمْ ۖ فَمَنْ يَكْفُرْ بَعْدُ مِنْكُمْ فَإِنِّي أُعَذِّبُهُ عَذَابًا لَا أُعَذِّبُهُ أَحَدًا مِنَ الْعَالَمِينَ ﴿١١٥﴾

११५) अल्लाहले भन्यो, मैले अवश्य नै त्यो खाना तिमीलाई पठाउने छु तर यसपछि तिमीहरूमध्ये यदि, कसैले कुफ्रको कुरो गर्नेछ त्यसलाई मैले यस्तो सजाय दिनेछु जुन दुवै संसारमा बस्नेहरूमध्ये अरु कसैलाई दिने छैन ।

وَإِذْ قَالَ اللَّهُ يَٰعِيسَى ابْنَ مَرْيَمَ ءَأَنتَ قُلْتَ لِلنَّاسِ اتَّخِذُونِي وَأُمِّيَ إِلَٰهَيْنِ مِن دُونِ اللَّهِ ۖ قَالَ سُبْحَٰنَكَ مَا يَكُونُ لِي أَنْ أَقُولَ مَا لَيْسَ لِي بِحَقٍّ ۚ إِن كُنتُ قُلْتُهُ فَقَدْ عَلِمْتَهُ ۚ تَعْلَمُ مَا فِي نَفْسِي وَلَا أَعْلَمُ مَا فِي نَفْسِكَ ۚ إِنَّكَ أَنتَ عَلَّٰمُ الْغُيُوبِ ﴿١١٦﴾

११६) र त्यो समय पनि वर्णन योग्य छ जब अल्लाहले भन्ने छः हे ईसा बिन मरियम ! के तिमीले मानिसहरूसित भनेका थियौ कि अल्लाह बाहेक मलाई र मेरी आमालाई पूज्य बनाई हाल ? ईसा(अलै.)ले भन्ने छन् कि तिमी पवित्र छौ, मलाई त्यो कुरो भन्न उचित कसरी हुन सक्दथ्यौ जुन कुराको मलाई अधिकार छैन ? मैले त्यसो भनेको भए तिमीलाई थाहा होला, (किनभने) जुन कुरो मेरो मनमा छ त्यो पनि तिमीलाई थाहा छ र जुन कुरो तिम्रो मनमा छ त्यो मलाई थाहा छैन । निःसन्देह तिमी सबै गुप्त कुराको ज्ञाता हौ ।

مَا قُلْتُ لَهُمْ إِلَّا مَا أَمَرْتَنِي بِهِ أَنِ اعْبُدُوا اللَّهَ رَبِّي وَرَبَّكُمْ ۚ وَكُنتُ عَلَيْهِمْ شَهِيدًا مَّا دُمْتُ فِيهِمْ ۖ فَلَمَّا تَوَفَّيْتَنِي كُنتَ أَنتَ الرَّقِيبَ عَلَيْهِمْ ۚ وَأَنتَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿١١٧﴾

११७) मैले त तिनीहरूसित अरु केही पनि भनेको होइन तर त्यो बाहेक जुनकि तिमीले मलाई भन्न आदेश गर्‍यौ, यो कि तिमीहरूले अल्लाहको उपासना गर, जो मेरो र तिम्रो सबैको पालनकर्ता हो र जबसम्म म तिनीहरूको बीचमा थिएँ, तिनीहरूको अवस्थाको साक्षी थिएँ । फेरि जब तिमीले मलाई उठाई हाल्यौ तब तिमी नै तिनीहरूको संरक्षक भयौ र तिमी प्रत्येक कुराको ज्ञाता हौ ।

إِن تُعَذِّبْهُمْ فَإِنَّهُمْ عِبَادُكَ ۖ وَإِن تَغْفِرْ لَهُمْ فَإِنَّكَ أَنتَ الْعَزِيزُ الْحَكِيمُ ﴿١١٨﴾

११८) यदि तिमीले तिनीहरूलाई दण्ड दिन्छौ भने तिनीहरू तिम्रा दास हुन् र यदि तिमीले क्षमा गरिदिन्छौ

भने निःसन्देह तिमी सर्वशक्तिमान र कौशल सम्पन्न छौ ।

قَالَ اللّٰهُ هٰذَا يَوْمُ يَنْفَعُ الصّٰدِقِيْنَ صِدْقُهُمْ ؕ لَهُمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ؕ رَضِيَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١١٩﴾

११९) अल्लाहले भन्ने छ कि आज त्यो दिन हो जबकि सत्यनिष्ठहरूलाई तिनीहरूको सत्यताले फाइदा पुऱ्याउने छ । तिनीहरूका लागि बगैंचाहरू छन् जसको सतहमा नहरहरू बगिराखेका छन् । सधैं तिनीहरू त्यसमा बास गर्ने छन् । अल्लाह तिनीहरूसित प्रसन्न छ र तिनीहरू अल्लासँग खुशी छन् । यो अत्यन्त ठूलो सफलता हो ।

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا فِيْهِنَّ ؕ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿١٢٠﴾

१२०) आकाशहरू र जमीन र जे-जति तिनीहरूको बीचमा छ सबै अल्लाहको राज्य हो र ऊ प्रत्येक कुरा माथि शक्ति सम्पन्न छ ।



# सूरतुल् अनआम-६




सूरतुल् अनआम मक्की हो यसमा १६५ आयतहरू र २० रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त कृपालु, असीम दयावान छ ।**

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

१) सबै प्रशंसा अल्लाहकै लागि हुन जसले आकाशहरू र पृथ्वीलाई बनायो र अँध्यारो र उज्यालोको सृष्टि गऱ्यो, तै पनि काफिरहरूले अरुलाई अल्लाह सरह ठान्दछन् ।

الْحَمْدُ لِلَّهِ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَجَعَلَ الظُّلُمَاتِ وَالنُّورَ ۖ ثُمَّ الَّذِينَ كَفَرُوا بِرَبِّهِمْ يَعْدِلُونَ ﴿١﴾

२) ऊ त्यही हो जसले तिमीलाई माटोबाट सृष्टि गऱ्यो, अनि एउटा समय निर्धारित गऱ्यो र दोस्रो मुद्दत (क़यामत) खास अल्लाह कहाँ नै छ तै पनि तिमी शंका गर्दछौ ।

هُوَ الَّذِي خَلَقَكُم مِّن طِينٍ ثُمَّ قَضَىٰ أَجَلًا ۖ وَأَجَلٌ مُّسَمًّى عِندَهُ ۖ ثُمَّ أَنتُمْ تَمْتَرُونَ ﴿٢﴾

३) र आकाशहरू र पृथ्वीमा उही एउटा (पूज्य) अल्लाह छ, ऊ तिम्रा अदृश्य र दृश्य सम्पूर्ण भेदका कुरा जान्दछ र तिमीले जुन कार्यहरू गर्दछौ, तिनलाई पनि ऊ जान्दछ ।

وَهُوَ اللَّهُ فِي السَّمَاوَاتِ وَفِي الْأَرْضِ ۖ يَعْلَمُ سِرَّكُمْ وَجَهْرَكُمْ وَيَعْلَمُ مَا تَكْسِبُونَ ﴿٣﴾

४) र अल्लाहका निशानीहरू मध्ये कुनै निशानी पनि तिनीहरू छेउ सम्म आउँदैन । तर तिनीहरू त्यसबाट विमुख भइहाल्छन् ।

وَمَا تَأْتِيهِم مِّنْ آيَةٍ مِّنْ آيَاتِ رَبِّهِمْ إِلَّا كَانُوا عَنْهَا مُعْرِضِينَ ﴿٤﴾

५) जब तिनीहरू नजिक सत्य किताब आयो, त तिनीहरू त्यसलाई पनि नकारिहाले, तसर्थ तिनीहरूलाई ती

فَقَدْ كَذَّبُوا بِالْحَقِّ لَمَّا جَاءَهُمْ ۖ فَسَوْفَ يَأْتِيهِمْ أَنبَاءُ مَا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٥﴾

कुराहरूको परिणाम जसको कि तिनीहरूले हाँसो गर्दछन् छिट्टै थाहा भइहाल्ने छ ।

أَلَمْ يَرَوْا كَمْ أَهْلَكْنَا مِن قَبْلِهِم مِّن قَرْنٍ مَّكَّنَّاهُمْ فِي الْأَرْضِ مَا لَمْ نُمَكِّن لَّكُمْ وَأَرْسَلْنَا السَّمَاءَ عَلَيْهِم مِّدْرَارًا وَجَعَلْنَا الْأَنْهَارَ تَجْرِي مِن تَحْتِهِمْ فَأَهْلَكْنَاهُم بِذُنُوبِهِمْ وَأَنشَأْنَا مِن بَعْدِهِمْ قَرْنًا آخَرِينَ ٦

६) के तिनीहरू देखेनन् कि हामीले तिनीहरू भन्दा अगाडिका कैंयौ समुदायलाई खतम गरिहाल्यौं, जसलाई हामीले पृथ्वीमा त्यस्तो शक्ति दिएका थियौं जुन रूपमा कि तिमीलाई दिएका छैनौं र तिनीहरूका निम्ति आकाशबाट प्रयाप्त पानी बर्षायौं र हामीले खोला-नालाहरू बनायौं पछि तिनीहरूलाई तिनीहरूको पापको कारण खतम गरिहाल्यौं र तिनीहरू पछि अन्य पुस्ताहरूको सृष्टि गर्‍यौं ।

وَلَوْ نَزَّلْنَا عَلَيْكَ كِتَابًا فِي قِرْطَاسٍ فَلَمَسُوهُ بِأَيْدِيهِمْ لَقَالَ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ٧

७) र यदि हामीले तपाईमाथि कागजमा लेखिएको कुनै ग्रन्थ उतारेको भए र यिनीहरूले त्यसलाई आफ्ना हातले स्पर्श गरेको भए तापनि यो काफिरहरू यही भन्दथे कि यो त खुल्ला रूपमा जादू हो ।

وَقَالُوا لَوْلَا أُنزِلَ عَلَيْهِ مَلَكٌ ۖ وَلَوْ أَنزَلْنَا مَلَكًا لَّقُضِيَ الْأَمْرُ ثُمَّ لَا يُنظَرُونَ ٨

८) र तिनीहरू यसरी भन्दछन् कि यिनीहरू छेउ कुनै फरिश्ता किन पठाइएन ? यदि हामीले कुनै फरिश्ता पठाएको भए सारा कुरा नै सिद्धि हाल्दथ्यौ, अनि तिनीहरूलाई एक छिनको समय पनि न दिइन्थ्यो ।

وَلَوْ جَعَلْنَاهُ مَلَكًا لَّجَعَلْنَاهُ رَجُلًا وَلَلَبَسْنَا عَلَيْهِم مَّا يَلْبِسُونَ ٩

९) र यदि हामीले कुनै फरिश्ता पठाउने भए, त्यसलाई पनि मानिसैको रूपमा

पठाउँथे र जुन शंका तिनीहरू अहिले गर्दछन्, त्यही शंका फेरि गर्ने थिए ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّن قَبْلِكَ فَحَاقَ بِالَّذِينَ سَخِرُوا مِنْهُم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿١٠﴾

१०) र यथार्थमा तपाई भन्दा अगाडिका पैगम्बरहरूसित पनि यस्तो नै हाँसो गरियो, फेरि तिनीहरू मध्ये जुन मानिसहरूले मजाक गर्ने गर्दथे, तिनलाई त्यस(उपहासको) सजायले घेरी हाल्थ्यो ।

قُلْ سِيرُوا فِي الْأَرْضِ ثُمَّ انظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿١١﴾

११) तपाई भनिदिनुस् कि पृथ्वीमा भ्रमण गर अनि हेर कि सत्यलाई झूठ भन्नेहरूको परिणाम कस्तो भयो ?

قُل لِّمَن مَّا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ قُل لِّلَّهِ ۚ كَتَبَ عَلَىٰ نَفْسِهِ الرَّحْمَةَ ۚ لَيَجْمَعَنَّكُمْ إِلَىٰ يَوْمِ الْقِيَامَةِ لَا رَيْبَ فِيهِ ۚ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فَهُمْ لَا يُؤْمِنُونَ ﴿١٢﴾

१२) तपाई भन्नुस् कि आकाशहरू र पृथ्वीमा जे-जति छ कसको हो ? भनिदिनुस् कि यो सबै अल्लाहकै लागी हुन् । अल्लाहले कृपागर्न आफ्नो जिम्मा अनिवार्य गरिहालेको छ । उसले तिमी सबैलाई कियामतका दिन जम्मा गर्ने छ यो कुरामा पनि कुनै शंका छैन जसले आफूलाई नोक्सानीमा पारिसकेका छन् तिनैले ईमान ल्याउदैनन् ।

وَلَهُ مَا سَكَنَ فِي اللَّيْلِ وَالنَّهَارِ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ﴿١٣﴾

१३) र अल्लाहकै हुन् ती जम्मै जुन कि दिन र रातीमा बस्छन् र उही नै हो जो सबै सुन्दछ, जान्छद ।

قُلْ أَغَيْرَ اللَّهِ أَتَّخِذُ وَلِيًّا فَاطِرِ السَّمَاوَاتِ وَالْأَرْضِ وَهُوَ يُطْعِمُ وَلَا يُطْعَمُ ۗ قُلْ إِنِّي أُمِرْتُ أَنْ أَكُونَ أَوَّلَ مَنْ أَسْلَمَ ۖ وَلَا تَكُونَنَّ مِنَ الْمُشْرِكِينَ ﴿١٤﴾

१४) तपाईले भन्नुस् कि के अल्लाह बाहेक जो आकाशहरू र पृथ्वीको स्रष्टा छ, र उसैले सबैलाई आहार दिन्छ र स्वयं कसैबाट आहार

लिदैन । के अरु कसैलाई पूजनीय बनाऊँ । यो पनि भनिदिनुस् कि मलाई आदेश भएको छ कि म सबभन्दा पहिला इस्लाम स्वीकार गरूँ र यो पनि कि तिमी मुश्रिकहरू मध्येको कहिले नहुनु ।

१५) यो पनि भनिदिनुस् कि यदि म आफ्नो पालनकर्ताको आदेशको उल्लंघन गर्दछु त मलाई ठूलो दिनको सजायको भय छ ।

قُلْ إِنِّيٓ أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٥﴾

१६) त्यो दिन यदि कोही सजायबाट मुक्त हुनेछ भने अल्लहको ठूलो कृपा हो । र त्यो खुल्ला रूपमा सफलता हो ।

مَّن يُصْرَفْ عَنْهُ يَوْمَئِذٍ فَقَدْ رَحِمَهُۥ ۚ وَذَٰلِكَ ٱلْفَوْزُ ٱلْمُبِينُ ﴿١٦﴾

१७) र यदि अल्लाहले तिमीलाई कुनै कष्ट पुऱ्याउँछ भने त्यसलाई उस बाहेक अरु कसैले हटाउन सक्तैन र यदि सुख पुऱ्याउँछ भने त्यो प्रत्येक कुरो माथि सर्वशक्तिमान छ ।

وَإِن يَمْسَسْكَ ٱللَّهُ بِضُرٍّ فَلَا كَاشِفَ لَهُۥٓ إِلَّا هُوَ ۖ وَإِن يَمْسَسْكَ بِخَيْرٍ فَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿١٧﴾

१८) र आफ्ना सेवकहरू माथि उसैको वर्चस्व छ, र उही तत्वदर्शी सर्वज्ञ छ ।

وَهُوَ ٱلْقَاهِرُ فَوْقَ عِبَادِهِۦ ۚ وَهُوَ ٱلْحَكِيمُ ٱلْخَبِيرُ ﴿١٨﴾

१९) तपाईले भन्नुस् कि गवाही दिने सबभन्दा ठूलो कुरा के हो । भन्नुस् अल्लाह नै मेरो र तिम्रो बीचमा साक्षी छ र यो कुरआन ममाथि यस कारणले उतारिएको हो कि यसबाट तिमीलाई र जुन-जुन मानिससम्म यो पुग्न सक्तछ ती

قُلْ أَىُّ شَىْءٍ أَكْبَرُ شَهَٰدَةً ۖ قُلِ ٱللَّهُ ۖ شَهِيدٌۢ بَيْنِى وَبَيْنَكُمْ ۚ وَأُوحِىَ إِلَىَّ هَٰذَا ٱلْقُرْءَانُ لِأُنذِرَكُم بِهِۦ وَمَنۢ بَلَغَ ۚ أَئِنَّكُمْ لَتَشْهَدُونَ أَنَّ مَعَ ٱللَّهِ ءَالِهَةً أُخْرَىٰ ۚ قُل لَّآ أَشْهَدُ ۚ قُلْ إِنَّمَا هُوَ إِلَٰهٌ وَٰحِدٌ وَإِنَّنِى بَرِىٓءٌ مِّمَّا تُشْرِكُونَ ﴿١٩﴾

सबैलाई डर देखाऊँ । के तिमी साँच्चै साक्षी बन्नेछौ कि अल्लाहको साथमा अरु कोही पूजनीय छन् ? (हे मुहम्मद स.अ.) भनिदिनुस् कि म यस्तो साक्ष्य दिन्न । भनिदिनुस् कि मात्र उही नै एउटा पूजा योग्य छ र जसलाई तिमीहरूले उसको साझेदार ठहराउँछौं, तिनीहरूबाट म निःसन्देह मुक्त छु ।

२०) जुन मानिसहरूलाई हामीले किताब प्रदान गरेका छौं तिनीहरूले पैगम्बरलाई त्यस्तै चिन्दछन् जस्तो कि आफ्नै छोराहरूलाई चिन्ने गर्दछन् । जसले आफूलाई क्षतिपुऱ्याई सकेका छन् तिनीहरूले ईमान ल्याउने छैनन् ।

الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْرِفُونَهُ كَمَا يَعْرِفُونَ أَبْنَاءَهُمُ ۘ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فَهُمْ لَا يُؤْمِنُونَ ﴿٢٠﴾

२१) र योभन्दा अन्यायी को होला जसले अल्लाह माथि झूठा आरोप लगाउँछ वा उसका आयतहरूलाई मिथ्या ठह्रयाउँछ । यस्ता अन्यायीहरूले मुक्ति पाउने छैनन् ।

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ بِآيَاتِهِ ۗ إِنَّهُ لَا يُفْلِحُ الظَّالِمُونَ ﴿٢١﴾

२२) र स्मरणीय छ त्योदिन जुन दिन हामीले सबै मानिसहरूलाई एकत्रित गर्नेछौं अनि मुश्रिकहरूसित सोध्नेछौं कि (आज) तिम्रा साझेदारहरू कहाँ छन्, जसलाई पूजनीय भनी तिमीहरू दावी गर्दथ्यौ ?

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيعًا ثُمَّ نَقُولُ لِلَّذِينَ أَشْرَكُوا أَيْنَ شُرَكَاؤُكُمُ الَّذِينَ كُنتُمْ تَزْعُمُونَ ﴿٢٢﴾

२३) त्यसपछि तिनीहरूको यो झूठ भन्नु बाहेक अरु कुनै उपद्रव हुँदैन

ثُمَّ لَمْ تَكُن فِتْنَتُهُمْ إِلَّا أَن قَالُوا وَاللَّهِ رَبِّنَا مَا كُنَّا مُشْرِكِينَ ﴿٢٣﴾

कि अल्लाहको कसम ! हे हाम्रो पालनकर्ता हामी कदापि बहुदेववादी थिएनौं ।

२४) अलि हेर त, कस्तो किसिमबाट तिनीहरूले आफनै माथि झूठा कुरा गरे, र जसको बारेमा मन गढन्त मिथ्या कुरागर्दथे ती सबै बेपत्ता भइहाले ।

انْظُرْ كَيْفَ كَذَبُوا عَلَىٰ أَنفُسِهِمْ ۚ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢٤﴾

२५) र तिनीहरू मध्ये केही यस्ता छन् जो तपाईको कुरा सुन्ने स्वाङ पार्छन् र हामीले तिनीहरूका हृदयमाथि आवरण हालिदिएका छौं, जसले कि तिनलाई बुझ्न नसकुन् र उनको कानहरूमा बहिरापनको सृजना गरिदिएका छौं र यदि तिनीहरूले सम्पूर्ण निशानीहरू देखे तापनि, तिनमाथि कहिले ईमान ल्याउने छैनन्, यहाँसम्म कि जब तिनीहरू तपाईको नजीक आउँछन् त बिना कारण विवाद गर्न आउँछन् त जो काफिर छन्, यसरी भन्दछन् कि यो (कुरआन) त पूर्वजहरूको दन्त कथा बाहेक अरु केही होइन ।

وَمِنْهُم مَّن يَسْتَمِعُ إِلَيْكَ ۖ وَجَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۚ وَإِن يَرَوْا كُلَّ آيَةٍ لَّا يُؤْمِنُوا بِهَا ۚ حَتَّىٰ إِذَا جَاءُوكَ يُجَادِلُونَكَ يَقُولُ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٢٥﴾

२६) र तिनीहरूले यसबाट अरुहरूलाई पनि रोकिराखेका छन् र स्वयं पनि टाढा रहन्छन् तर तिनीहरूले आफूलाई नै विनाश गरिरहेका छन् र तिनीहरू महसूस गरिरहेका छैनन् ।

وَهُمْ يَنْهَوْنَ عَنْهُ وَيَنْأَوْنَ عَنْهُ ۖ وَإِن يُهْلِكُونَ إِلَّا أَنفُسَهُمْ وَمَا يَشْعُرُونَ ﴿٢٦﴾

وَلَوْ تَرَىٰ إِذْ وُقِفُوا عَلَى النَّارِ فَقَالُوا يَا لَيْتَنَا نُرَدُّ وَلَا نُكَذِّبَ بِآيَاتِ رَبِّنَا وَنَكُونَ مِنَ الْمُؤْمِنِينَ ﴿٢٧﴾

२७) यदि तपाईले त्यो समय हेर्न पाउने भए जब यिनीहरू नर्क छेउ उभ्याइने छन् र भन्ने छन् कि क्याराम्रो हुने थियो यदि हामीलाई फर्काइयोस् भने हामीले आफ्ना पालनकर्ताका आयतहरूलाई झूठा भन्ने थिएनौं र हामी ईमान ल्याउने थियौं ।

بَلْ بَدَا لَهُم مَّا كَانُوا يُخْفُونَ مِن قَبْلُ ۖ وَلَوْ رُدُّوا لَعَادُوا لِمَا نُهُوا عَنْهُ وَإِنَّهُمْ لَكَاذِبُونَ ﴿٢٨﴾

२८) हो, यिनीहरूले जुन कुरा अघि लुकाउँदथे (आज) त्यो कुरा तिनीहरूका आँखाको अगाडि छर्लङ्ग भइसकेको छ र यिनलाई संसारमा फर्काइए पनि जुन कामबाट मनाही गरिएको थियो, त्यही काम फेरि गर्न थाल्नेछन् । निःसन्देह यिनीहरू एकदम झूठा हुन् ।

وَقَالُوا إِنْ هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا وَمَا نَحْنُ بِمَبْعُوثِينَ ﴿٢٩﴾

२९) र तिनीहरू भन्दछन् कि हाम्रो जो संसारिक जीवन छ, यही नै वास्तविक जिन्दगी हो, (मृत्यु पश्चात) फेरि हामी जीवित पारिने छैनौं ।

وَلَوْ تَرَىٰ إِذْ وُقِفُوا عَلَىٰ رَبِّهِمْ ۚ قَالَ أَلَيْسَ هَٰذَا بِالْحَقِّ ۚ قَالُوا بَلَىٰ وَرَبِّنَا ۚ قَالَ فَذُوقُوا الْعَذَابَ بِمَا كُنتُمْ تَكْفُرُونَ ﴿٣٠﴾

३०) र तपाईले तिनीहरूलाई आफ्नो पालनकर्ताको अगाडि उभ्याइऐको बेला हेर्नु भएमा अल्लाहले सोध्नेछ, के यो कुरा सत्य होइन ? तिनीहरूले भन्ने छन्, पालनकर्ताको कसम किन नहुनु ! अल्लाहले आदेश दिनेछ अब आफ्नो कुफ्रको बदलामा सजाय चाख ।

قَدْ خَسِرَ الَّذِينَ كَذَّبُوا بِلِقَاءِ اللَّهِ ۖ حَتَّىٰ إِذَا جَاءَتْهُمُ السَّاعَةُ بَغْتَةً قَالُوا يَا حَسْرَتَنَا عَلَىٰ مَا فَرَّطْنَا فِيهَا وَهُمْ يَحْمِلُونَ أَوْزَارَهُمْ عَلَىٰ ظُهُورِهِمْ ۚ أَلَا سَاءَ مَا يَزِرُونَ ﴿٣١﴾

३१) निःसन्देह जुन मानिसहरूले अल्लाहसँगको भेटलाई झूठा ठाने, तिनीहरू घाटामा छन् यहाँसम्म कि जब कियामत एक्कासी तिनीहरूमाथि आइपुग्छ, त्यतिखेर भन्न थाल्ने छन् कि अफ्सोच हाम्रो त्यस भूलमाथि जो हामीले गर्‍यौं । र तिनीहरूले आफना (पापका) भारी आफ्ना पिठ्यूमा बोकी राखेको हुनेछन् । हेर, जुन भारी यिनीहरूले बोकिराखने छन् त्यो साह्रै नराम्रो छ ।

وَمَا الْحَيَاةُ الدُّنْيَا إِلَّا لَعِبٌ وَلَهْوٌ ۖ وَلَلدَّارُ الْآخِرَةُ خَيْرٌ لِّلَّذِينَ يَتَّقُونَ ۗ أَفَلَا تَعْقِلُونَ ﴿٣٢﴾

३२) र संसारिक जीवन त एउटा खेल र मनोरञ्जन बाहेक केहीपनि होइन । र अत्यन्त राम्रो घर त आखिरतको घर हो तिनीहरूको निम्ति जो अल्लाहसित डरमान्छन्, के तिमीले बुझ्दैनौ ?

قَدْ نَعْلَمُ إِنَّهُ لَيَحْزُنُكَ الَّذِي يَقُولُونَ ۖ فَإِنَّهُمْ لَا يُكَذِّبُونَكَ وَلَٰكِنَّ الظَّالِمِينَ بِآيَاتِ اللَّهِ يَجْحَدُونَ ﴿٣٣﴾

३३) हामीलाई राम्ररी थाहा छ यिनी-हरूको कुराले तपाईलाई दुःख दिन्छ तर यिनीहरूले तपाईलाई झूठा ठान्दैनन् बरु अन्यायीहरू अल्लाहका आयतहरूलाई नकार्दछन् ।

وَلَقَدْ كُذِّبَتْ رُسُلٌ مِّن قَبْلِكَ فَصَبَرُوا عَلَىٰ مَا كُذِّبُوا وَأُوذُوا حَتَّىٰ أَتَاهُمْ نَصْرُنَا ۚ وَلَا مُبَدِّلَ لِكَلِمَاتِ اللَّهِ ۚ وَلَقَدْ جَاءَكَ مِن نَّبَإِ الْمُرْسَلِينَ ﴿٣٤﴾

३४) र तपाई भन्दा अगाडिका पैगम्बरहरूलाई पनि झूठा ठहराइन्थ्यो, तिनीहरूले अल्लाहको तर्फबाट मद्दत न पुगुन्जेल, धैर्य पूर्वक इन्कार र यातना सहने गर्दथे र अल्लाहका आदेशहरू कसैले

परिवर्तन गर्न सक्तैन । र तपाईले पैगम्बरहरूको सम्बन्धमा अघि नै थाहा पाइसकेको हो ।

وَإِن كَانَ كَبُرَ عَلَيْكَ إِعْرَاضُهُمْ فَإِنِ اسْتَطَعْتَ أَن تَبْتَغِيَ نَفَقًا فِي الْأَرْضِ أَوْ سُلَّمًا فِي السَّمَاءِ فَتَأْتِيَهُم بِآيَةٍ ۚ وَلَوْ شَاءَ اللَّهُ لَجَمَعَهُمْ عَلَى الْهُدَىٰ ۚ فَلَا تَكُونَنَّ مِنَ الْجَاهِلِينَ ﴿٣٥﴾

३५) र यदि तिनीहरूको तिरस्कार तपाईलाई गाह्रो लाग्छ भने तपाईमा शक्ति छ त पृथ्वीमा कुनै सुरङ्ग वा आकाश सम्म कुनै सीढी (भऱ्याङ्ग) फेला पार अनि तिनीहरू छेउ कुनै चमत्कार ल्याउनु । र यदि अल्लाह चाहेको भए सबैलाई सही मार्गमा एकत्रित गरिदिन्थ्यो । तसर्थ तपाई यी मूर्खहरू मध्येको न हुनु ।

إِنَّمَا يَسْتَجِيبُ الَّذِينَ يَسْمَعُونَ ۘ وَالْمَوْتَىٰ يَبْعَثُهُمُ اللَّهُ ثُمَّ إِلَيْهِ يُرْجَعُونَ ﴿٣٦﴾

३६) सत्यलाई स्वीकार तिनैले गर्दछन् जो सुन्दछन् । र मृतकहरूलाई अल्लाहले जीवित गरिउठाउने छ, अनि सबै उसैतिर फर्काइने छन् ।

وَقَالُوا لَوْلَا نُزِّلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۚ قُلْ إِنَّ اللَّهَ قَادِرٌ عَلَىٰ أَن يُنَزِّلَ آيَةً وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٣٧﴾

३७) र यिनीहरू भन्दछन् कि उसको पालनकर्ताको तर्फबाट तिनीहरूका लागि कुनै चमत्कार किन पठाइएन ? भनिदिनुस् कि अल्लाह निश्चित रूपले चमत्कार पठाउन शक्ति सम्पन्न छ, तर तिनीहरू मध्ये धेरै बेखबर छन् ।

وَمَا مِن دَابَّةٍ فِي الْأَرْضِ وَلَا طَائِرٍ يَطِيرُ بِجَنَاحَيْهِ إِلَّا أُمَمٌ أَمْثَالُكُم ۚ مَّا فَرَّطْنَا فِي الْكِتَابِ مِن شَيْءٍ ۚ ثُمَّ إِلَىٰ رَبِّهِمْ يُحْشَرُونَ ﴿٣٨﴾

३८) र पृथ्वीमा जति हिंड्ने जीव छन वा उड्ने चराहरू (प्राणीहरू) छन्, तिनीहरूमा कुनै पनि किसिम यस्तो छैन जुन तिमीहरूको जस्तै समुदायहरू नहोऊन् । हामीले किताबमा लेख्न कुनै कुरा छाडेका

छैनौं र फेरि सबै आफ्ना पालनकर्ताको अगाडि एकत्रित हुने छन् ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا صُمٌّ وَبُكْمٌ فِي الظُّلُمَاتِ ۗ مَن يَشَإِ اللَّهُ يُضْلِلْهُ وَمَن يَشَأْ يَجْعَلْهُ عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٣٩﴾

३९) र जसले हाम्रा आयतहरूलाई झूठा भन्दछन् तिनीहरू अनेक प्रकारको अन्धकारमा बहिरा र लाटा भइरहेका छन् । अल्लाह जसलाई चाहे पथ-विचलित गर्दछ । र जसलाई चाहे सही बाटोमा हिंडाई दिन्छ ।

قُلْ أَرَأَيْتَكُمْ إِنْ أَتَاكُمْ عَذَابُ اللَّهِ أَوْ أَتَتْكُمُ السَّاعَةُ أَغَيْرَ اللَّهِ تَدْعُونَ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٠﴾

४०) तपाई भन्नुस् (काफिरहरू) आफ्नो मनमा विचार गर कि यदि तिमीमाथि अल्लाहको सजाय आई परेमा वा कियामत आइपुग्छ त के तिमी अल्लाह बाहेक अरु कसैलाई गुहार्ने छौ ? यदि तिमी साँचो हौ ।

بَلْ إِيَّاهُ تَدْعُونَ فَيَكْشِفُ مَا تَدْعُونَ إِلَيْهِ إِن شَاءَ وَتَنسَوْنَ مَا تُشْرِكُونَ ﴿٤١﴾

४१) बरु, खास उसैलाई गुहार्नेछौ, अनि जसको लागि तिमी गुहार्नेछौ, यदि उ चाहन्छ भने त्यसलाई हटाइदिन्छ र जसलाई तिमी साझेदार ठहराउँछौ तिनीहरूलाई बिर्सिनेछौ ।

وَلَقَدْ أَرْسَلْنَا إِلَىٰ أُمَمٍ مِّن قَبْلِكَ فَأَخَذْنَاهُم بِالْبَأْسَاءِ وَالضَّرَّاءِ لَعَلَّهُمْ يَتَضَرَّعُونَ ﴿٤٢﴾

४२) र हामीले तिमी भन्दा अगाडि धेरै समुदायहरू तिर पैगम्बरहरू पठाएका थिएँ अनि हामीले तिनीहरूलाई दुःख र कष्टमा पारेका थिएँ कि तिनीहरू विनम्र भई विन्ती गरुन् ।

فَلَوْلَا إِذْ جَاءَهُم بَأْسُنَا تَضَرَّعُوا وَلَٰكِن قَسَتْ قُلُوبُهُمْ وَزَيَّنَ لَهُمُ الشَّيْطَانُ مَا كَانُوا يَعْمَلُونَ ﴿٤٣﴾

४३) जब हामीबाट तिनीहरूलाई सजाय पुगेको थियो त त्यसबेला तिनीहरूले विनम्रता किन देखाएनन् ? उल्टै तिनका हृदयहरू कठोर भइदिए र

शैतानले तिनका अपराधपूर्ण काम तिनीहरूका निम्ति झन् आकर्षणपूर्ण देखिने बनाई दियो ।

४४) तर जब तिनीहरूले, जुन नसीहत तिनलाई दिइएको थियो त्यसलाई बिर्सिदिए, तब हामीले तिनीहरूका लागि सबै ढोकाहरू खोलिदियौं, यहाँसम्म कि जब ती कुराहरूसित जुन तिनलाई दिइएको थियो, निकै प्रसन्न भइहाले तब हामीले तिनलाई एका-एक समातिहाल्यौं र तिनीहरू त्यति बेला निराशामा डुबिहाले ।

فَلَمَّا نَسُوا۟ مَا ذُكِّرُوا۟ بِهِۦ فَتَحْنَا عَلَيْهِمْ أَبْوَٰبَ كُلِّ شَىْءٍ حَتَّىٰٓ إِذَا فَرِحُوا۟ بِمَآ أُوتُوٓا۟ أَخَذْنَٰهُم بَغْتَةً فَإِذَا هُم مُّبْلِسُونَ ﴿٤٤﴾

४५) फेरि दुष्कर्मीहरूको जरा कटिहाल्यौ र सबै प्रशंसाहरू अल्लाहकै लागि हुन्, जो सम्पूर्ण जगत्को पालनकर्ता हो ।

فَقُطِعَ دَابِرُ ٱلْقَوْمِ ٱلَّذِينَ ظَلَمُوا۟ ۚ وَٱلْحَمْدُ لِلَّهِ رَبِّ ٱلْعَٰلَمِينَ ﴿٤٥﴾

४६) तपाई भन्नुस् कि विचार गर, यदि अल्लाह तिम्रो श्रवण शक्ति र दृष्टि खोसिहालेको र तिम्रो हृदयमा आफ्नो छाप लगाइदिन्छ भने अल्लाह बाहेक अरु कोही पूजनीय छ जसले यी कुराहरू पुनः पल्टाउन सकोस् ? हेर हामी कसरी आफ्ना तर्कहरूलाई विभिन्न कोंणबाट प्रस्तुत गरिराखेका छौं । तैपनि यिनीहरू विमुख हुँदै गएका छन् ।

قُلْ أَرَءَيْتُمْ إِنْ أَخَذَ ٱللَّهُ سَمْعَكُمْ وَأَبْصَٰرَكُمْ وَخَتَمَ عَلَىٰ قُلُوبِكُم مَّنْ إِلَٰهٌ غَيْرُ ٱللَّهِ يَأْتِيكُم بِهِ ۗ ٱنظُرْ كَيْفَ نُصَرِّفُ ٱلْءَايَٰتِ ثُمَّ هُمْ يَصْدِفُونَ ﴿٤٦﴾

४७) तपाई भन्नुस् कि विचार गर यदि तिमीमाथि अल्लाहको सजाय एक्कासी वा खुल्ला रूपले आउँछ

قُلْ أَرَءَيْتَكُمْ إِنْ أَتَىٰكُمْ عَذَابُ ٱللَّهِ بَغْتَةً أَوْ جَهْرَةً هَلْ يُهْلَكُ إِلَّا ٱلْقَوْمُ ٱلظَّٰلِمُونَ ﴿٤٧﴾

भने के अन्यायीहरू बाहेक अरु कोही विनष्ट हुनेछन् ?

४८) र हामीले पैगम्बरहरूलाई यसकालागि पठाउँदछौं कि उनीहरूले सु-समाचार देऊन् र डर देखाऊन् र जसले इमान ल्याए र असल मानिस भइहाले त तिनीहरूलाई न कुनै भय हुनेछ न त तिनीहरू दु:खी हुनेछन् ।

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنْذِرِينَ ۖ فَمَنْ آمَنَ وَأَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٤٨﴾

४९) र जसले हाम्रा आयतहरूलाई झूठा भने, तिनीहरूलाई तिनीहरूको आज्ञा उल्लंघनको कारण सजाय हुनेछ ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا يَمَسُّهُمُ الْعَذَابُ بِمَا كَانُوا يَفْسُقُونَ ﴿٤٩﴾

५०) तपाई भनिदिनुस् कि म तिमीसित यो भन्दिन कि मसँग अल्लाहको ढुकुटी छ र नत म अन्तर्यामी हुँ, र न त म यो भन्दछु कि म फरिश्ता हुँ । म त मात्र ती आदेशहरूको पालन गर्दछु जुन मलाई अल्लाहको तर्फबाट प्राप्त हुन्छ । तपाई भन्नुस् कि के अन्धा र आँखा देख्ने एकनास हुनसक्छ र ? अनि तिमी विचार किन पुऱ्याउँदैनौं ?

قُلْ لَا أَقُولُ لَكُمْ عِنْدِي خَزَائِنُ اللَّهِ وَلَا أَعْلَمُ الْغَيْبَ وَلَا أَقُولُ لَكُمْ إِنِّي مَلَكٌ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰ إِلَيَّ ۚ قُلْ هَلْ يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ ۚ أَفَلَا تَتَفَكَّرُونَ ﴿٥٠﴾

५१) र यस कुरआन द्वारा यस्ता मानिसहरूलाई डराउने गर्नुस् जो यस कुराबाट भयभीत छन् कि आफ्ना पालनकर्ताको अगाडि उपस्थित गरिनेछन् । र जान्दछन् कि उस बाहेक अरु कोही न त तिनको सहयोगी हुनेछ र न

وَأَنْذِرْ بِهِ الَّذِينَ يَخَافُونَ أَنْ يُحْشَرُوا إِلَىٰ رَبِّهِمْ ۙ لَيْسَ لَهُمْ مِنْ دُونِهِ وَلِيٌّ وَلَا شَفِيعٌ لَعَلَّهُمْ يَتَّقُونَ ﴿٥١﴾

सिफारिशवाला, ताकि तिनीहरू संयमी बन्न सकुन् ।

५२) र जो मानिसहरू विहान र साँझ आफ्ना पालनकर्तासित प्रार्थना गर्दछन् र उसको खुशीको खोजीमा हुन्छन्, तिनीहरूलाई निष्काशन न गर । तिनीहरूको (क्रियाकलापहरूको) जवाफदेहि तपाईमाथि केही पनि छैन र न त तपाईको कामको जवाफदेहि तिनीहरूमाथि छ । यदि तिनीहरूलाई निकालि दिन्छौ भने तिमी अन्यायीहरू मध्येको हुनेछौ ।

وَلَا تَطْرُدِ الَّذِينَ يَدْعُونَ رَبَّهُم بِالْغَدَاةِ وَالْعَشِيِّ يُرِيدُونَ وَجْهَهُ ۖ مَا عَلَيْكَ مِنْ حِسَابِهِم مِّن شَيْءٍ وَمَا مِنْ حِسَابِكَ عَلَيْهِم مِّن شَيْءٍ فَتَطْرُدَهُمْ فَتَكُونَ مِنَ الظَّالِمِينَ ﴿٥٢﴾

५३) र यस्तै किसिमबाट हामीले कोहीलाई केही मानिसहरूबाट परीक्षा गरिराखेका छौं जसबाट तिनीहरू भन्दै गरुन् कि के यी नै हुन हामीमध्येका जसमाथि अल्लाहले कृपा गरेको छ ? के यस्तो छैन कि अल्लाह आभारी हुनेहरूलाई अति जान्दछ ।

وَكَذَٰلِكَ فَتَنَّا بَعْضَهُم بِبَعْضٍ لِّيَقُولُوا أَهَٰؤُلَاءِ مَنَّ اللَّهُ عَلَيْهِم مِّن بَيْنِنَا ۗ أَلَيْسَ اللَّهُ بِأَعْلَمَ بِالشَّاكِرِينَ ﴿٥٣﴾

५४) र जब तिमी छेउ यस्ता मानिसहरू आउँछन् जसले हाम्रा आयतहरूमा विश्वास गर्दछन् त तिनीहरूसित (तिनीहरूको भलाईको लगि) सलामुन, अलैकुम भन्दै गर । अल्लाहले आफूमाथि कृपागर्नु अनिवार्य गरिहालेको छ । यदि तिमीहरूमध्ये कसैले अज्ञानता वश कुनै दुष्कर्म गरिहालेको छ र पछि

وَإِذَا جَاءَكَ الَّذِينَ يُؤْمِنُونَ بِآيَاتِنَا فَقُلْ سَلَامٌ عَلَيْكُمْ ۖ كَتَبَ رَبُّكُمْ عَلَىٰ نَفْسِهِ الرَّحْمَةَ ۖ أَنَّهُ مَنْ عَمِلَ مِنكُمْ سُوءًا بِجَهَالَةٍ ثُمَّ تَابَ مِن بَعْدِهِ وَأَصْلَحَ فَأَنَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٥٤﴾

प्रायश्चित गरिहाल्यो र आफ्नो आचरण सुधार गरिहाल्यो भने अल्लाह ठुलो मुक्तिदाता र अत्यन्त दयावान छ ।

५५) यस्तै किसिमले हामी आफ्ना आयतहरू स्पष्ट रूपले वर्णन गर्ने गर्छौं र यस कारणले कि अपराध गर्नेहरूको काम गर्ने तरिका देखियोस् ।

وَكَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ وَلِتَسْتَبِيْنَ سَبِيْلُ الْمُجْرِمِيْنَ ﴿٥٥﴾

५६) (हे पैगम्बर) तपाई भनिदिनुस् कि अल्लाह बाहेक जसको उपासना तिमीले गर्छौं मलाई तिनीहरूको पूजा गर्नबाट मनाही गरिएको छ । यो पनि भन्नुस् कि म तिम्रा इच्छाहरूको पछि-पछि लाग्दिन । यदि यस्तो गर्दछु भने पथ-विचलित हुने छु र सही मार्ग प्राप्त मानिसहरूमध्येबाट हुने छैन ।

قُلْ اِنِّيْ نُهِيْتُ اَنْ اَعْبُدَ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ ۗ قُلْ لَّآ اَتَّبِعُ اَهْوَآءَكُمْ ۙ قَدْ ضَلَلْتُ اِذًا وَّمَآ اَنَا مِنَ الْمُهْتَدِيْنَ ﴿٥٦﴾

५७) भनिदिनुस् कि मेरो आफ्नो पालन-कर्ताको तर्फबाट एउटा प्रमाण छ र तिमीले त्यसलाई असत्य भन्दछौ जुन कुरोको लागि हतार गरिराखेका छौ त्यो मसित छैन । आदेश दिन अल्लाहकै अधिकारमा छ अरु कसैको होइन । उसले सत्यकुरा बताई दिन्छ र उही सबभन्दा राम्रो इन्साफ गर्नेवाला छ ।

قُلْ اِنِّيْ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّيْ وَكَذَّبْتُمْ بِهٖ ۗ مَا عِنْدِيْ مَا تَسْتَعْجِلُوْنَ بِهٖ ۗ اِنِ الْحُكْمُ اِلَّا لِلّٰهِ ۗ يَقُصُّ الْحَقَّ وَهُوَ خَيْرُ الْفٰصِلِيْنَ ﴿٥٧﴾

५८) भनिदिनुस् कि जुन कुरोको लागि तिमीले हतार गरिराखेका छौ, यदि

قُلْ لَّوْ اَنَّ عِنْدِيْ مَا تَسْتَعْجِلُوْنَ بِهٖ لَقُضِيَ الْاَمْرُ بَيْنِيْ وَبَيْنَكُمْ ۗ وَاللّٰهُ اَعْلَمُ بِالظّٰلِمِيْنَ ﴿٥٨﴾

त्यो मसंग भएको भए, मेरो र तिम्रो बीचको कुराको टुङ्गो लागि सक्दथ्यो र अल्लाह अत्याचारीहरूलाई राम्ररी जान्दछ ।

५९) र अदृश्य कुराको साँचो अल्लाहसँग छ जसको बारेमा उस बाहेक अरु कसैलाई थाहा छैन र जे-जति पृथ्वी र समुन्द्रमा छन् उसैलाई त्यसको ज्ञान छ। एउटा पात झर्दा पनि उसलाई थाहा हुन्छ र पृथ्वीको अँध्यारोमा कुनैदाना उसको जानकारी बेगैर झर्दैन कुनै हरियो, सुकेको कुरा जे-जति छन् सबै स्पष्ट रूपले किताबमा (लौहेमहफूजमा) छन् ।

وَعِندَهُۥ مَفَاتِحُ ٱلْغَيْبِ لَا يَعْلَمُهَآ إِلَّا هُوَۚ وَيَعْلَمُ مَا فِى
ٱلْبَرِّ وَٱلْبَحْرِۚ وَمَا تَسْقُطُ مِن وَرَقَةٍ إِلَّا يَعْلَمُهَا وَلَا حَبَّةٍ فِى
ظُلُمَٰتِ ٱلْأَرْضِ وَلَا رَطْبٍ وَلَا يَابِسٍ إِلَّا فِى كِتَٰبٍ
مُّبِينٍ ٥٩

६०) र उही यस्तो छ जसले कि रातीमा तिम्रो ज्यानलाई (केही अंशमा) आफ्नो नियन्त्रणमा लिन्छ र जे-जति तिमीले दिनमा गर्दछौ त्यो जान्दछ, फेरि तिमीलाई दिनमा ब्युझाई दिन्छ, ताकि निर्धारित समय पूरा गरिहालियोस्, अनि तिमीलाई उसैतिर फर्केर जानुछ। फेरि उसले तिमीलाई बताउनेछ जुन तिमीले गर्ने गरेका थियौ ।

وَهُوَ ٱلَّذِى يَتَوَفَّىٰكُم بِٱلَّيْلِ وَيَعْلَمُ مَا جَرَحْتُم
بِٱلنَّهَارِ ثُمَّ يَبْعَثُكُمْ فِيهِ لِيُقْضَىٰٓ أَجَلٌ مُّسَمًّىۖ ثُمَّ
إِلَيْهِ مَرْجِعُكُمْ ثُمَّ يُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ٦٠

६१) र उही आफ्ना दासहरूमाथि अधिपत्य सम्पन्न छ श्रेष्ठछ र तिमीमाथि संरक्षक पठाएको हुन्छ, यहाँसम्म कि जब तिमीहरूमध्ये

وَهُوَ ٱلْقَاهِرُ فَوْقَ عِبَادِهِۦۖ وَيُرْسِلُ عَلَيْكُمْ حَفَظَةً
حَتَّىٰٓ إِذَا جَآءَ أَحَدَكُمُ ٱلْمَوْتُ تَوَفَّتْهُ رُسُلُنَا وَهُمْ
لَا يُفَرِّطُونَ ٦١

कसैको मृत्यु आउँछ, त्यतिखेर हामीले पठाएका फरिश्ताहरूले उसको प्राण झिकिहाल्छन् र आफ्नो कर्तव्य पालनमा ढिलो गर्दैनन् ।

६२) अनि सबै मानिसहरू आफ्ना वास्तविक मालिक अल्लाह छेउ फिर्ता गराइनेछन् । सुनिहाल कि आदेश उसैको हो र उसले छिटै हिसाब लिने छ ।

ثُمَّ رُدُّوٓا۟ إِلَى ٱللَّهِ مَوْلَىٰهُمُ ٱلْحَقِّ ۚ أَلَا لَهُ ٱلْحُكْمُ وَهُوَ أَسْرَعُ ٱلْحَـٰسِبِينَ ﴿٦٢﴾

६३) तपाई भन्नुस् तिमीलाई जंगल र समुन्द्रको बिपत्तिहरूबाट कसले मुक्ति प्रदान गर्दछ जब तिमीले उसलाई ठूलो आवाजमा वा चुपचाप विन्ती पूर्ण गुहार्छौ कि यदि तिमी हामीलाई यी संकटबाट मुक्ति प्रदान गर्दछौ भने हामी निःसन्देह धेरै आभारी हुनेवालाहरू मध्यको हुनेछौं ।

قُلْ مَن يُنَجِّيكُم مِّن ظُلُمَـٰتِ ٱلْبَرِّ وَٱلْبَحْرِ تَدْعُونَهُۥ تَضَرُّعًا وَخُفْيَةً لَّئِنْ أَنجَىٰنَا مِنْ هَـٰذِهِۦ لَنَكُونَنَّ مِنَ ٱلشَّـٰكِرِينَ ﴿٦٣﴾

६४) तपाई भन्नुस् कि अल्लाहले नै तिमीलाई त्यस (खतरा)बाट र हरेक संकटबाट मुक्ति प्रदान गर्दछ, र तैपनि तिमीले उसँग अरुलाई साझेदार ठहराउने गर्द छौ ।

قُلِ ٱللَّهُ يُنَجِّيكُم مِّنْهَا وَمِن كُلِّ كَرْبٍ ثُمَّ أَنتُمْ تُشْرِكُونَ ﴿٦٤﴾

६५) तपाई भन्नुस् कि तिमीमाथि तिम्रा माथिबाट वा खुट्टा मुनिबाट कुनै सजाय पठाउन ऊ सक्षम छ । अथवा तिमीहरूलाई विभिन्न समूहमा विभाजित गरी झगडा गराई हालोस् र तिम्रा आपसको भिडन्तका

قُلْ هُوَ ٱلْقَادِرُ عَلَىٰٓ أَن يَبْعَثَ عَلَيْكُمْ عَذَابًا مِّن فَوْقِكُمْ أَوْ مِن تَحْتِ أَرْجُلِكُمْ أَوْ يَلْبِسَكُمْ شِيَعًا وَيُذِيقَ بَعْضَكُم بَأْسَ بَعْضٍ ۗ ٱنظُرْ كَيْفَ نُصَرِّفُ ٱلْـَٔايَـٰتِ لَعَلَّهُمْ يَفْقَهُونَ ﴿٦٥﴾

स्वाद चखाइहालोस् । हेर्नुस् हामीले आफ्ना आयतहरूलाई कुन-कुन तरिकाले वर्णन गर्दछौं ताकि यिनीहरू बुझ्न सकुन् ।

६६) र तपाईको समुदाय यस (कुरआन) लाई झूठो भन्दछ जब कि त्यो सत्य छ । भनिदिनुस् तिमीलाई संयमी बनाउने जिम्मेवारी म माथि छैन ।

وَكَذَّبَ بِهِۦ قَوْمُكَ وَهُوَ ٱلْحَقُّ ۚ قُل لَّسْتُ عَلَيْكُم بِوَكِيلٍ ٦٦

६७) हरेक खबरको एउटा समय निर्धारित छ र तिमीलाई छिटै थाहा भइहाल्छ ।

لِّكُلِّ نَبَإٍ مُّسْتَقَرٌّ ۚ وَسَوْفَ تَعْلَمُونَ ٦٧

६८) र जब तपाईले यस्ता मानिसहरूलाई देख्नुहुन्छ जो हाम्रा आयतहरूको बारेमा अनर्गल बक्वास गरिराखेका छन् भने तिनीहरूबाट अलग भइहाल्नुस्, यहाँसम्म कि तिनीहरू अरु कुरामा व्यस्त भइ हालुन् । र यदि शैतानले यो कुरा तपाइलाई विर्साइदिन्छ भने याद भए पछि अपराधीहरूको साथमा नबस्नुस् ।

وَإِذَا رَأَيْتَ ٱلَّذِينَ يَخُوضُونَ فِىٓ ءَايَٰتِنَا فَأَعْرِضْ عَنْهُمْ حَتَّىٰ يَخُوضُوا۟ فِى حَدِيثٍ غَيْرِهِۦ ۚ وَإِمَّا يُنسِيَنَّكَ ٱلشَّيْطَٰنُ فَلَا تَقْعُدْ بَعْدَ ٱلذِّكْرَىٰ مَعَ ٱلْقَوْمِ ٱلظَّٰلِمِينَ ٦٨

६९) र आत्म-संयमीहरू माथि तिनीहरूको सोधपूछको कुनै जिम्मेवारी छैन, तर हो, सम्झाउने काम उनीहरूको हो, सम्भवत: तिनीहरू पनि परहेजगार बन्न सकुन् ।

وَمَا عَلَى ٱلَّذِينَ يَتَّقُونَ مِنْ حِسَابِهِم مِّن شَىْءٍ وَلَٰكِن ذِكْرَىٰ لَعَلَّهُمْ يَتَّقُونَ ٦٩

७०) र जुन मानिसहरू आफ्ना धर्मलाई खेल र तमाशा बनाएका छन्, र संसारिक जीवनले तिनीहरूलाई भ्रमजालमा पारिसकेको छ त्यस्ता

وَذَرِ ٱلَّذِينَ ٱتَّخَذُوا۟ دِينَهُمْ لَعِبًا وَلَهْوًا وَغَرَّتْهُمُ ٱلْحَيَوٰةُ ٱلدُّنْيَا ۚ وَذَكِّرْ بِهِۦٓ أَن تُبْسَلَ نَفْسٌۢ بِمَا كَسَبَتْ لَيْسَ لَهَا مِن دُونِ ٱللَّهِ وَلِىٌّ وَلَا شَفِيعٌ وَإِن تَعْدِلْ كُلَّ عَدْلٍ لَّا يُؤْخَذْ مِنْهَآ ۗ أُو۟لَٰٓئِكَ

ٱلَّذِينَ أُبْسِلُوا۟ بِمَا كَسَبُوا۟ ۖ لَهُمْ شَرَابٌ مِّنْ حَمِيمٍ وَعَذَابٌ أَلِيمٌۢ بِمَا كَانُوا۟ يَكْفُرُونَ ﴿٧٠﴾

मानिसहरूबाट अलग्गै रहनु । तर हो यस कुरआनको माध्यमबाट उपदेश दिँदै गर्नु, ताकि कोही आफ्नो आचरणको कारण सजायमा नफसोस् । कि अल्लाह बाहेक न त तिनीहरूको कोही सहयोगी हुनेछ न त सिफारिश गर्ने मानिस । यस्तो भइहालोस् कि यदि त्यसले प्रत्येक कुरो जुनकि धरतीमा छ क्षतिपूर्तिका रूपमा दिन खोजे पनि त्यो स्वीकार्य हुने छैन । यिनै मानिसहरू हुन् जसले कि आफ्ना कार्यको फलस्वरूप विनाशमा फँस्न पुग्दछन् । उनीहरूको कुफ्रको कारण तिनीहरूको निम्ति पिउनको लागि उम्लिराखेको पानी र कष्टदायक सजाय हुनेछ ।

قُلْ أَنَدْعُوا۟ مِن دُونِ ٱللَّهِ مَا لَا يَنفَعُنَا وَلَا يَضُرُّنَا وَنُرَدُّ عَلَىٰٓ أَعْقَابِنَا بَعْدَ إِذْ هَدَىٰنَا ٱللَّهُ كَٱلَّذِى ٱسْتَهْوَتْهُ ٱلشَّيَـٰطِينُ فِى ٱلْأَرْضِ حَيْرَانَ لَهُۥٓ أَصْحَـٰبٌ يَدْعُونَهُۥٓ إِلَى ٱلْهُدَى ٱئْتِنَا ۗ قُلْ إِنَّ هُدَى ٱللَّهِ هُوَ ٱلْهُدَىٰ ۖ وَأُمِرْنَا لِنُسْلِمَ لِرَبِّ ٱلْعَـٰلَمِينَ ﴿٧١﴾

(७१) तपाई भन्नुस् कि के हामीले अल्लाह बाहेक, यस्तो कुरालाई गुहारौं जसले न हामीलाई फाइदा गर्न सक्दछ न त नोक्सान । र जब अल्लाहले हामीलाई सहीबाटो देखाइसकेको छ, त के हामी त्यसबाट विमुख भइहालौं ? त्यो मानिस जस्तो जसलाई कि शैतानहरू जंगलमा सही मार्गबाट विचलित गरीदिएका छन् उसले यताउता घुम्दै गर्छ, उसकाकेही साथीहरू पनि छन् र उनीहरू ठीकबाटो तिर बोलाउँछन् कि हाम्रो पासमा आइहाल ।

भनिदिनुस् कि सहीबाटो त त्यही नै हो जुन हामीलाई अल्लाहले देखाएको छ र हामीलाई त यही आदेश प्राप्त भएको छ कि हामी आफ्ना पालनकर्ताका पूर्णरूपले आज्ञाकारी बनौं ।

وَاَنْ اَقِيْمُوا الصَّلٰوةَ وَاتَّقُوْهُ ۚ وَهُوَ الَّذِيْٓ اِلَيْهِ تُحْشَرُوْنَ ﴿٧٢﴾

७२) र यो (पनि) कि नमाज् पढ्दै गर र उसँग डरमान्दै गर र उही नै हो जसको समीप तिमीहरूलाई भेला गरिने छ ।

وَهُوَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ۖ وَيَوْمَ يَقُوْلُ كُنْ فَيَكُوْنُ ۚ قَوْلُهُ الْحَقُّ ۚ وَلَهُ الْمُلْكُ يَوْمَ يُنْفَخُ فِي الصُّوْرِ ۚ عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ ۚ وَهُوَ الْحَكِيْمُ الْخَبِيْرُ ﴿٧٣﴾

७३) र उही त हो जसले आकाशहरू र पृथ्वीलाई सत्यका साथ बनाएको छ, र जुन दिन उसले यतिमात्र भन्ने छ कि भइहाल त त्यो भइहाल्छ । उसको कुरा साँचो र प्रभावकारी छ र जुन दिन शूर (सिंगा) फुकिन्छ त्यस दिन उसैको राज्य हुनेछ । दृश्य र अदृश्य कुराको ऊ ज्ञाता हो र उही नै बुद्धि सम्पन्न र सर्वज्ञ छ ।

وَاِذْ قَالَ اِبْرٰهِيْمُ لِاَبِيْهِ اٰزَرَ اَتَتَّخِذُ اَصْنَامًا اٰلِهَةً ۚ اِنِّيْٓ اَرٰىكَ وَقَوْمَكَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٧٤﴾

७४) र त्यो समय पनि याद गर्ने योग्य छ जब इब्राहीम(अलै)ले आफ्ना पिता आजरसित भने के तिमीले मूर्तिहरूलाई पूजनीय ठान्दछौ ? निःसंदेह म देख्छु कि तिमी र तिम्रो मानिसहरू खुल्ला रूपमा मार्ग-विचलित छौ ।

وَكَذٰلِكَ نُرِيْٓ اِبْرٰهِيْمَ مَلَكُوْتَ السَّمٰوٰتِ وَالْاَرْضِ وَلِيَكُوْنَ مِنَ الْمُوْقِنِيْنَ ﴿٧٥﴾

७५) र यस प्रकार हामीले इब्राहीम (अलै)लाई आकाशहरू र पृथ्वीका अनौठा प्राणीहरू देखाउन थाल्यौं

जसबाट पक्का विश्वासी भइहालोस् ।

فَلَمَّا جَنَّ عَلَيْهِ الَّيْلُ رَاٰ كَوْكَبًا ۚ قَالَ هٰذَا رَبِّيْ ۚ فَلَمَّآ اَفَلَ قَالَ لَآ اُحِبُّ الْاٰفِلِيْنَ ۝٧٦

७६) जब रातीको अँध्यारो फैल्यो आकाशमा एउटा तारा देखियो । भन्न थाले कि यो मेरो पालनकर्ता हो । तर जब त्यो डुब्यो त भन्न थाले कि डुबीहाल्नेहरूलाई म मायाँ गर्दिन ।

فَلَمَّا رَاَ الْقَمَرَ بَازِغًا قَالَ هٰذَا رَبِّيْ ۚ فَلَمَّآ اَفَلَ قَالَ لَىِٕنْ لَّمْ يَهْدِنِيْ رَبِّيْ لَاَكُوْنَنَّ مِنَ الْقَوْمِ الضَّآلِّيْنَ ۝٧٧

७७) अनि जब चन्द्रलाई देखे कि चम्किराखेको छ, त भन्न थाले कि यो मेरो पालनकर्ता हो, तर जब त्यो पनि डुब्यो त भन्न थाले कि, यदि मेरो पालनकर्ताले मलाई सही बाटो देखाएन भने म तिनीमध्येबाट हुनेछु जो सही बाटोबाट विचलित छन् ।

فَلَمَّا رَاَ الشَّمْسَ بَازِغَةً قَالَ هٰذَا رَبِّيْ هٰذَآ اَكْبَرُ ۚ فَلَمَّآ اَفَلَتْ قَالَ يٰقَوْمِ اِنِّيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ۝٧٨

७८) पछि जब सूर्यलाई देखे कि टल्किराखेको छ त भन्न थाले कि यो मेरो पालनकर्ता हो यो त सबभन्दा ठूलो छ, परन्तु जब त्यो पनि अस्ताइहाल्यो, त भन्न थाले, (हे मानिसहरू) म तिमीहरूको अल्लाहसँग कसैको साझेदारी ठहाराउनेबाट मुक्त छु ।

اِنِّيْ وَجَّهْتُ وَجْهِيَ لِلَّذِيْ فَطَرَ السَّمٰوٰتِ وَالْاَرْضَ حَنِيْفًا وَّمَآ اَنَا مِنَ الْمُشْرِكِيْنَ ۝٧٩

७९) म दृढ भएर आफूलाई उसतिर प्रवृत्त गर्दछु जसले आकाशहरू र पृथ्वीको सृष्टि गरेको छ र म मुश्रिकहरू मध्येको होइन ।

وَحَآجَّهٗ قَوْمُهٗ ۚ قَالَ اَتُحَآجُّوْٓنِّيْ فِي اللّٰهِ وَقَدْ هَدٰىنِ ۚ وَلَآ اَخَافُ مَا تُشْرِكُوْنَ بِهٖٓ اِلَّآ اَنْ يَّشَآءَ رَبِّيْ شَيْـًٔا ۚ وَسِعَ رَبِّيْ كُلَّ شَيْءٍ عِلْمًا ۚ اَفَلَا تَتَذَكَّرُوْنَ ۝٨٠

८०) र उनको समुदायका मानिसहरूले उनीसँग विवाद गर्न थाले तब "उनले भनेकि तिमी मसँग

अल्लाहको बारेमा के विवाद गर्दछौ" त्यसले त मलाई सही बाटो देखाइसकेको छ र जसलाई तिमीले अल्लाहको साझेदार बनाउँछौ म तिनीसँग डराउदैन । अल्लाहको इच्छा नहुन्जेल कुनै कुरा हुँदैन । सबै कुराको जानकारी मेरो पालनकर्ता कै ज्ञानको परिधिभित्र पर्दछ । के तिमीले त्यो कुराको विचार गर्दैनौ ?

وَكَيْفَ أَخَافُ مَا أَشْرَكْتُمْ وَلَا تَخَافُونَ أَنَّكُمْ أَشْرَكْتُم بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ عَلَيْكُمْ سُلْطَانًا ۚ فَأَيُّ الْفَرِيقَيْنِ أَحَقُّ بِالْأَمْنِ ۖ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨١﴾

८१) म ती कुराहरूसँग, जसलाई कि तिमीले अल्लाहको साझेदार ठहराउँछौ, कसरी डर मान्न सक्छु, जब कि तिमीलाई यो कुरोसँग भय छैन कि अल्लाहसँग अरुको साझेदारी ठहराउँछौ जसको लागि उसले कुनै प्रमाण उतारेको छैन ? अब दुईटै समूह मध्ये कुनचाँहि सुरक्षाको हकदार छ, यदि तिमीमा ज्ञान छ भने ।

الَّذِينَ آمَنُوا وَلَمْ يَلْبِسُوا إِيمَانَهُم بِظُلْمٍ أُولَٰئِكَ لَهُمُ الْأَمْنُ وَهُم مُّهْتَدُونَ ﴿٨٢﴾

८२) जसले आस्था गर्दछन् र आफ्नो ईमानसँग शिर्कका कुराहरू मिसाउँदैनन्, त्यस्ताहरूको निम्ति सुरक्षा छ र तिनैले मार्गदर्शन प्राप्त गर्दछन् ।

وَتِلْكَ حُجَّتُنَا آتَيْنَاهَا إِبْرَاهِيمَ عَلَىٰ قَوْمِهِ ۚ نَرْفَعُ دَرَجَاتٍ مَّن نَّشَاءُ ۗ إِنَّ رَبَّكَ حَكِيمٌ عَلِيمٌ ﴿٨٣﴾

८३) र यो हाम्रो तर्क थियो जुन हामीले इब्राहीम(अलै)लाई उनको समुदायको विरुद्ध प्रयोग गर्न प्रदान गरेका थियौं । हामीले जसलाई चाहन्छौ उच्च दर्जा प्रदान गर्दछौं । निःसन्देह

तिम्रो पालनकर्ता बुद्धि सम्पन्न र सर्वज्ञ छ ।

وَوَهَبْنَا لَهٗٓ اِسْحٰقَ وَيَعْقُوْبَ ۭ كُلًّا هَدَيْنَا ۚ وَنُوْحًا هَدَيْنَا مِنْ قَبْلُ وَمِنْ ذُرِّيَّتِهٖ دَاوٗدَ وَسُلَيْمٰنَ وَاَيُّوْبَ وَيُوْسُفَ وَمُوْسٰى وَهٰرُوْنَ ۭ وَكَذٰلِكَ نَجْزِي الْمُحْسِنِيْنَ ﴿٨٤﴾

८४) र हामीले तिनलाई इस्हाक(अलै.) र याकूब(अलै.) दियौं र सबैलाई हामीले मार्ग दर्शन प्रदान गऱ्यौं र अघि नूहलाई पनि शिक्षा प्रदान गरेका थियौं र उनको संतति मध्ये दाऊद र सुलैमान र अय्यूब र यूसुफ र मूसा (अलै.) र हारूनलाई र हामीले सदाचारीहरूलाई यस्तै किसिमले पुरस्कार दिने गर्दछौ ।

وَزَكَرِيَّا وَيَحْيٰى وَعِيْسٰى وَاِلْيَاسَ ۭ كُلٌّ مِّنَ الصّٰلِحِيْنَ ﴿٨٥﴾

८५) र जकरीया र यह्या र ईसा र इलियासलाई पनि, यी सबै सदाचारी थिए ।

وَاِسْمٰعِيْلَ وَالْيَسَعَ وَيُوْنُسَ وَلُوْطًا ۭ وَكُلًّا فَضَّلْنَا عَلَي الْعٰلَمِيْنَ ﴿٨٦﴾

८६) र इस्माईल र यस्आ र यूनुस र लूतलाई पनि र ती सबैलाई संसारका मानिसहरू माथि श्रेष्ठता प्रदान गरेका थियौं ।

وَمِنْ اٰبَاۗىِٕهِمْ وَذُرِّيّٰتِهِمْ وَاِخْوَانِهِمْ ۚ وَاجْتَبَيْنٰهُمْ وَهَدَيْنٰهُمْ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٨٧﴾

८७) र कसै-कसैलाई तिनीहरूका बाबु-बाजेलाई र सन्तति र दाजु भाइहरू मध्येबाट पनि र हामीले तिनलाई रोजेका थियौं र सही बाटो देखाएका थियौं ।

ذٰلِكَ هُدَى اللّٰهِ يَهْدِيْ بِهٖ مَنْ يَّشَاۗءُ مِنْ عِبَادِهٖ ۭ وَلَوْ اَشْرَكُوْا لَحَبِطَ عَنْهُمْ مَّا كَانُوْا يَعْمَلُوْنَ ﴿٨٨﴾

८८) यो अल्लाहको मार्गदर्शन नै हो जसको माध्यमबाट आफ्ना दासहरूमध्ये जसलाई चाहन्छ मार्गदर्शन गर्दछ । र यदि तिनीहरूले अल्लाहसँग अरुको साझेदारी ठहराउने भए,

तिनीहरूको सबै कर्महरू बर्बाद भएर जाने थियो ।

أُولَٰئِكَ الَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ وَالْحُكْمَ وَالنُّبُوَّةَ ۚ فَإِن يَكْفُرْ بِهَا هَٰؤُلَاءِ فَقَدْ وَكَّلْنَا بِهَا قَوْمًا لَّيْسُوا بِهَا بِكَافِرِينَ ﴿٨٩﴾

८९) यी त्यस्ता मानिसहरू थिए जसलाई हामीले किताब, बुद्धिमत्ता र नबूवत दिएका थियौं । यदि यिनीहरूले नबुवत (दूतत्व) मान्न इन्कार गर्दछन् भने, हामीले त्यसको लागि यस्ता मानिसहरूलाई नियुक्त गरिसकेका छौं कि तिनीहरूले ती कुराहरूबाट कहिल्यै इन्कार गर्ने छैनन् ।

أُولَٰئِكَ الَّذِينَ هَدَى اللَّهُ ۖ فَبِهُدَاهُمُ اقْتَدِهْ ۗ قُل لَّا أَسْأَلُكُمْ عَلَيْهِ أَجْرًا ۖ إِنْ هُوَ إِلَّا ذِكْرَىٰ لِلْعَالَمِينَ ﴿٩٠﴾

९०) यी त्यस्ता मानिसहरू थिए जसलाई अल्लाहले सही बाटो देखाएको थियो, यसर्थ तिनैको उपदेशका अनुयायी बन । तपाई भनिदिनुस् कि म तिमीसित यसबारे केही बदला माग्दिन । यो त संसारको मानिसहरूको लागि मात्र उपदेश हो ।

وَمَا قَدَرُوا اللَّهَ حَقَّ قَدْرِهِ إِذْ قَالُوا مَا أَنزَلَ اللَّهُ عَلَىٰ بَشَرٍ مِّن شَيْءٍ ۗ قُلْ مَنْ أَنزَلَ الْكِتَابَ الَّذِي جَاءَ بِهِ مُوسَىٰ نُورًا وَهُدًى لِّلنَّاسِ ۖ تَجْعَلُونَهُ قَرَاطِيسَ تُبْدُونَهَا وَتُخْفُونَ كَثِيرًا ۖ وَعُلِّمْتُم مَّا لَمْ تَعْلَمُوا أَنتُمْ وَلَا آبَاؤُكُمْ ۖ قُلِ اللَّهُ ۖ ثُمَّ ذَرْهُمْ فِي خَوْضِهِمْ يَلْعَبُونَ ﴿٩١﴾

९१) र तिनीहरूले अल्लाहको जुन रूपमा आदर गर्न जान्नु पर्दथ्यो, त्यो जानेनन् । जब तिनीहरूले भने कि अल्लाहले मानिसमाथि केही पनि उतारेको छैन । भन्नुस् कि जुन किताब मुसा(अलै.)ले लिएर आएका थिए, त्यसलाई कसले प्रदान गरेको छ, यसको विशेषता हो कि यो मानिसहरूको निम्ति प्रकाश र मार्गदर्शन हो र जसलाई तिमीहरूले

अलग-अलग पानामा राखिराखेका छौ । त्यसका केही भागलाई त प्रकट गर्दछौ र धेरैलाई लुकाउँछौ । तिमीहरूलाई ती धेरै कुराहरू सिकाइयो जसलाई कि न तिमी जान्दथ्यौ र न त तिम्रा ठूला बडाले । भनिदिनुस् कि (यस किताबलाई) अल्लाहले नै उतारेको छ तसर्थ तिनीहरूलाई उनको तुच्छ कुराहरूको बक्वासमा खेलिराख्न दिनुस् ।

وَهَٰذَا كِتَابٌ أَنزَلْنَاهُ مُبَارَكٌ مُّصَدِّقُ الَّذِي بَيْنَ يَدَيْهِ وَلِتُنذِرَ أُمَّ الْقُرَىٰ وَمَنْ حَوْلَهَا ۚ وَالَّذِينَ يُؤْمِنُونَ بِالْآخِرَةِ يُؤْمِنُونَ بِهِ ۖ وَهُمْ عَلَىٰ صَلَاتِهِمْ يُحَافِظُونَ ﴿٩٢﴾

९२) यो पनि यस्तै किताब हो जसलाई हामीले उतारेका छौं जो धेरै कल्याणकारी छ, पहिलाका किताबहरूलाई प्रमाणित गर्दछ र यस कारणले कि तपाईले मक्का र त्यसको छेउछाउमा बस्ने मानिसहरूलाई डराउन सक्नुहोस्, र जुन मानिसहरूले आखिरतको दिनमा विश्वास गर्दछन्, तिनीहरू जस्तैले यस किताबमा यी पनि आस्था राख्दछन् र आफ्ना नमाजहरूबारे नित्यता गर्दैछन् ।

وَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ قَالَ أُوحِيَ إِلَيَّ وَلَمْ يُوحَ إِلَيْهِ شَيْءٌ وَمَن قَالَ سَأُنزِلُ مِثْلَ مَا أَنزَلَ اللَّهُ ۗ وَلَوْ تَرَىٰ إِذِ الظَّالِمُونَ فِي غَمَرَاتِ الْمَوْتِ وَالْمَلَائِكَةُ بَاسِطُو أَيْدِيهِمْ أَخْرِجُوا أَنفُسَكُمُ ۖ الْيَوْمَ تُجْزَوْنَ عَذَابَ الْهُونِ بِمَا كُنتُمْ تَقُولُونَ عَلَى اللَّهِ غَيْرَ الْحَقِّ وَكُنتُمْ عَنْ آيَاتِهِ تَسْتَكْبِرُونَ ﴿٩٣﴾

९३) र त्योभन्दा ठूलो अत्याचारी को होला, जस्ले अल्लाहमाथि झूठो दोषारोपण गर्दछ अथवा यो भन्दछ कि म माथि अल्लाहको बाणी आएको छ, जबकि त्यस माथि कुनै पनि अल्लाहका बाणी आएको हुँदैन, र जसले यो भन्दछ कि जुन प्रकारको किताब अल्लाहले प्रदान गरेको छ,

त्यस्तो किताब म पनि ल्याउँछु । र यदि तपाईले ती अन्यायीहरूलाई त्यतिखेर देख्नु भयो जब यी अन्यायीहरू मृत्युका कष्टपूर्ण व्यथामा हुन्छन् र फरिश्ताहरू आफ्ना हातहरू बढाइ राखेका हुन्छन् यो भन्दै कि आफ्ना प्राणहरू समर्पित गर, आज तिमीहरूलाई अपमानजनक सजाय दिइने छ, किनभने तिमीहरूले अल्लाहको विरोधमा झूठा कुरा गर्ने गर्दथ्यौ र त्यसका आयतहरूलाई तिरस्कारपूर्ण अस्वीकार गर्ने गर्दथ्यौ ।

وَلَقَدْ جِئْتُمُونَا فُرَادَىٰ كَمَا خَلَقْنَاكُمْ أَوَّلَ مَرَّةٍ وَتَرَكْتُم مَّا خَوَّلْنَاكُمْ وَرَاءَ ظُهُورِكُمْ ۖ وَمَا نَرَىٰ مَعَكُمْ شُفَعَاءَكُمُ الَّذِينَ زَعَمْتُمْ أَنَّهُمْ فِيكُمْ شُرَكَاءُ ۚ لَقَد تَّقَطَّعَ بَيْنَكُمْ وَضَلَّ عَنكُم مَّا كُنتُمْ تَزْعُمُونَ ﴿٩٤﴾

९४) र हेर जस्तो हामीले तिमीलाई प्रथम पटक सृष्टि गरेका थियौं त्यस्तै तिमी आज हाम्रो समीपमा एक्ला-एक्लै आएका छौ र जुन हामीले तिमीलाई प्रदान गरेका थियौं ती सबै कुरा आफ्ना पछाडि छोडेर आयौ, र हामीले तिम्रा साथमा भएका सिफारिश गर्नेहरूलाई पनि देख्दैनौं, जसको बारेमा तिम्रो दावी थियो कि तिनीहरू तिम्रा सहभागी हुन् । निश्चय नै तिम्रा आपसी सम्बन्धहरू त समाप्त भइहाले र जुन दावी तिमीले गर्ने गर्दथ्यौ ती सबै खतम भए ।

إِنَّ اللَّهَ فَالِقُ الْحَبِّ وَالنَّوَىٰ ۖ يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَمُخْرِجُ الْمَيِّتِ مِنَ الْحَيِّ ۚ ذَٰلِكُمُ اللَّهُ ۖ فَأَنَّىٰ تُؤْفَكُونَ ﴿٩٥﴾

९५) निःसन्देह अल्लाहले नै बीऊ र गेंडालाई चीरेर विरुवा उमार्छ, उसैले सजीवलाई निर्जीवबाट निकाल्दछ र मृतकबाट ज्यानवालालाई निकाल्दछ ।

यही नै अल्लाह हो, अनि तिमी दिगभ्रान्त भई किन हिडिराखेका छौ ।

فَالِقُ الْاِصْبَاحِ ۚ وَجَعَلَ الَّيْلَ سَكَنًا وَّالشَّمْسَ
وَالْقَمَرَ حُسْبَانًا ۚ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ﴿٩٦﴾

९६) उसले (रात्रिको अंधकारबाट) विहानीको उज्यालो च्यातेर निकाल्दछ र उसैले रातिलाई विश्रामको निम्ति र सूर्य र चन्द्रलाई प्रकृयाबद्ध बनाएको छ । यो प्रमाणित कुराहो त्यो शक्तिशाली सर्वज्ञाता (अल्लाह) को ।

وَهُوَ الَّذِيْ جَعَلَ لَكُمُ النُّجُوْمَ لِتَهْتَدُوْا بِهَا فِيْ
ظُلُمٰتِ الْبَرِّ وَالْبَحْرِ ۗ قَدْ فَصَّلْنَا الْاٰيٰتِ لِقَوْمٍ
يَّعْلَمُوْنَ ﴿٩٧﴾

९७) र त्यही त हो जसले कि तिम्रो लागि तारामण्डललाई सृष्टि गऱ्यो ताकि तिमी जंगलको र पानीको र अँध्यारोमा पनि बाटो थाहा पाउन सक । र बुद्धिमानहरूको निम्ति हामीले प्रमाणहरू खुल्लारूपमा वर्णन गरिसकेका छौं ।

وَهُوَ الَّذِيْٓ اَنْشَاَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ فَمُسْتَقَرٌّ
وَّمُسْتَوْدَعٌ ۗ قَدْ فَصَّلْنَا الْاٰيٰتِ لِقَوْمٍ يَّفْقَهُوْنَ ﴿٩٨﴾

९८) र उही त हो जसले तिमीलाई एक व्यक्तिबाट जन्मायो, अनि तिम्रा लागि धेरै बस्ने एउटा ठाउँ र एउटा थोरै बस्ने ठाउँ बनायो । बुझ्नेहरूको निम्ति हामीले आफ्ना आयतहरू स्पष्ट रूपमा वर्णन गरेका छौं ।

وَهُوَ الَّذِيْٓ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً ۚ فَاَخْرَجْنَا بِهٖ
نَبَاتَ كُلِّ شَيْءٍ فَاَخْرَجْنَا مِنْهُ خَضِرًا نُّخْرِجُ مِنْهُ حَبًّا
مُّتَرَاكِبًا ۚ وَمِنَ النَّخْلِ مِنْ طَلْعِهَا قِنْوَانٌ دَانِيَةٌ
وَّجَنّٰتٍ مِّنْ اَعْنَابٍ وَّالزَّيْتُوْنَ وَالرُّمَّانَ مُشْتَبِهًا
وَّغَيْرَ مُتَشَابِهٍ ۗ اُنْظُرُوْٓا اِلٰى ثَمَرِهٖٓ اِذَآ اَثْمَرَ
وَيَنْعِهٖ ۗ اِنَّ فِيْ ذٰلِكُمْ لَاٰيٰتٍ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٩٩﴾

९९) र उही हो जसले आकाशबाट पानी बर्षायो अनि हामीले त्यसबाट थरी-थरीका हरिया कुराहरू उब्जाउँछौं अनि त्यसबाट हरिया हरियाकोपिलाहरू निकाल्दछौं र यी कोपिलाहरूबाट तिनैसँग एक

आपसमा संलग्न दानाहरू निकाल्दछौं र खजूरका गाभासित झुण्डिराखेका झुप्पा र अंगूरका बगैंचाहरू र जैतून र अनार जुनकि आपसमा एक अर्का जस्तो पनि छन् र फरक - फरक पनि छन् । यी कुरा जब फल्दछन् त तिनका फलहरू माथि र तिनका पाक्ने अवस्थालाई हेर । यिनीहरूमा त्यस्ता मानिसहरूका लागि जसले विश्वास गर्दछन् निशानीहरू छन् ।

१००) र तिनीहरूले शैतानहरूलाई अल्लाहका साझेदार ठहराउँदछन् जब कि तिनीहरूलाई अल्लाहले नै सृष्टि गरेको हो र ती अज्ञानी-हरूले(अल्लाहका) छोरा छोरीहरू बनाएका छन् तर ऊ (अल्लाह) यस्ता कुराहरूबाट मुक्त र पवित्र छ जुन तिनीहरूले उसको बारेमा भन्दछन् ।

وَجَعَلُوا لِلَّهِ شُرَكَاءَ الْجِنَّ وَخَلَقَهُمْ وَخَرَقُوا لَهُ بَنِينَ وَبَنَاتٍ بِغَيْرِ عِلْمٍ سُبْحَانَهُ وَتَعَالَىٰ عَمَّا يَصِفُونَ ﴿١٠٠﴾

१०१) त्यही नै आकाशहरू र पृथ्वीको स्रष्टा हो । उसलाई सन्तान कहाँबाट हुन्छ जबकि उसको कुनै पत्नी छैन र उसले प्रत्येक कुराको सृष्टि गरेको छ । र उसलाई हरेक कुराको जानकारी छ ।

بَدِيعُ السَّمَاوَاتِ وَالْأَرْضِ أَنَّىٰ يَكُونُ لَهُ وَلَدٌ وَلَمْ تَكُن لَّهُ صَاحِبَةٌ وَخَلَقَ كُلَّ شَيْءٍ وَهُوَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١٠١﴾

१०२) यी नै अल्लाह तिम्रो पालनकर्ता हो उस बाहेक अरु कोही पूजनीय छैन उही नै प्रत्येक कुराको सृष्टिकर्ता हो । तसर्थ तिमी उसैको उपसना

ذَٰلِكُمُ اللَّهُ رَبُّكُمْ لَا إِلَٰهَ إِلَّا هُوَ خَالِقُ كُلِّ شَيْءٍ فَاعْبُدُوهُ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ وَكِيلٌ ﴿١٠٢﴾

गर र उही सम्पूर्ण कुराहरूको सु-सञ्चालन गर्ने संयोजक हो ।

लَا تُدْرِكُهُ الْأَبْصَارُ وَهُوَ يُدْرِكُ الْأَبْصَارَ ۖ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴿١٠٣﴾

१०३) (त्यो यस्तो छ कि) उसलाई कसैको आँखाहरूले देख्न सक्तैनन् र उसले सबै आँखाहरूलाई देख्न सक्तछ र ऊ रहस्य जान्नेवाला सर्वज्ञ छ ।

قَدْ جَاءَكُم بَصَائِرُ مِن رَّبِّكُمْ ۖ فَمَنْ أَبْصَرَ فَلِنَفْسِهِ ۖ وَمَنْ عَمِيَ فَعَلَيْهَا ۚ وَمَا أَنَا عَلَيْكُم بِحَفِيظٍ ﴿١٠٤﴾

१०४) अब निःसन्देह तिमी छेउ तिम्रो पालनकर्ताबाट सत्यताको प्रमाणहरू पुगिसकेका छन् तसर्थ जसले देख्यो, उसले आफ्नो भलो गरिहाल्यो र जो अन्धो बनिरह्यो त्यसले आफ्नो हकमा नराम्रो गरिहाल्यो र म तिमीहरूको हेर्नको लागि वाध्य छैन ।

وَكَذَٰلِكَ نُصَرِّفُ الْآيَاتِ وَلِيَقُولُوا دَرَسْتَ وَلِنُبَيِّنَهُ لِقَوْمٍ يَعْلَمُونَ ﴿١٠٥﴾

१०५) र हामी यस्तै किसिमबाट आफ्ना आयतहरूलाई विभिन्न तरिकाले वर्णन गर्दछौं ताकि यिनीहरू यो भनुन् कि तपाईले कसैबाट सिक्नु भएको हो र ताकि बुझ्नेहरूको निम्ति हामीले त्यसको पूर्ण व्याख्या गरिहालौं ।

اتَّبِعْ مَا أُوحِيَ إِلَيْكَ مِن رَّبِّكَ ۖ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ وَأَعْرِضْ عَنِ الْمُشْرِكِينَ ﴿١٠٦﴾

१०६) जुन आदेश तपाईको पालनकर्ताबाट तपाईलाई आउँछ, त्यसको पालन गर्नेगर र पालनकर्ता (अल्लाह) बाहेक अरु कोही सत्य पूजनीय छैन र मुशिरकहरूबाट पन्छिने गर्नु ।

وَلَوْ شَاءَ اللَّهُ مَا أَشْرَكُوا ۗ وَمَا جَعَلْنَاكَ عَلَيْهِمْ حَفِيظًا ۖ وَمَا أَنتَ عَلَيْهِم بِوَكِيلٍ ﴿١٠٧﴾

१०७) र यदि अल्लाहले चाहेको भए, यिनीहरूले शिर्क गर्ने थिएनन् र (हे पैगम्बर स.अ. !) हामीले तपाइलाई

तिनीहरू माथि संरक्षक नियुक्त गरेको होइन र न त तपाई माथि तिनीहरूको क्रियाकलापको सञ्चालनको जिम्मेवारी छ ।

وَلَا تَسُبُّوا الَّذِينَ يَدْعُونَ مِن دُونِ اللَّهِ فَيَسُبُّوا
اللَّهَ عَدْوًا بِغَيْرِ عِلْمٍ ۗ كَذَٰلِكَ زَيَّنَّا لِكُلِّ أُمَّةٍ
عَمَلَهُمْ ثُمَّ إِلَىٰ رَبِّهِم مَّرْجِعُهُمْ فَيُنَبِّئُهُم بِمَا
كَانُوا يَعْمَلُونَ ﴿١٠٨﴾

१०८) र जसलाई यी मुशिरकहरू अल्लाह बाहेक गुहार्छन् तिनीहरूलाई गाली नगर्नु किन भने त्यसो गरेमा यिनीहरू अज्ञानतामा अल्लाहलाई नराम्रो भन्ने छन् । यस प्रकार हामीले हरेक समूहका क्रियाकलापहरूलाई आकर्षक बनाएर देखाएका छौं । पछि तिनीहरूले आफ्ना पालनकर्ता छेउ फर्केर जानु छ । अनि उसले तिनीहरूलाई बताउने छ जे तिनीहरूले गर्ने गर्दथे ।

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ لَئِن جَاءَتْهُمْ آيَةٌ
لَّيُؤْمِنُنَّ بِهَا ۚ قُلْ إِنَّمَا الْآيَاتُ عِندَ اللَّهِ ۖ وَمَا
يُشْعِرُكُمْ أَنَّهَا إِذَا جَاءَتْ لَا يُؤْمِنُونَ ﴿١٠٩﴾

१०९) र यिनीहरूले जोड दिएर अल्लाहको कसम खाँदछन् कि यदि तिनीहरूको पासमा कुनै निशानी आएको भए, त त्यसलाई अवश्य नै विश्वास गर्ने थिए । तपाई भनिदिनुस् कि निशानीहरू त सबै अल्लाहकै नियन्त्रणमा छन् र तिमीलाई के थाहा छ ? निशानीहरू जब आउनेछन् तब पनि यिनीहरूले ईमान ल्याउने छैनन् ।

وَنُقَلِّبُ أَفْئِدَتَهُمْ وَأَبْصَارَهُمْ كَمَا لَمْ يُؤْمِنُوا
بِهِ أَوَّلَ مَرَّةٍ وَنَذَرُهُمْ فِي طُغْيَانِهِمْ
يَعْمَهُونَ ﴿١١٠﴾

११०) र हामीले पनि तिनका हृदय र आँखाहरूलाई फेरि दिन्छौं जस्तो कि यिनीहरू यस (कुरआन) मा पहिलो पटक ईमान ल्याएनन् । र

तिनलाई छोडिदिने छौं, ताकि आफ्ना अट्टेरिपनामा भौतारी राखुन् ।

وَلَوۡ أَنَّنَا نَزَّلۡنَآ إِلَيۡهِمُ ٱلۡمَلَٰٓئِكَةَ وَكَلَّمَهُمُ
ٱلۡمَوۡتَىٰ وَحَشَرۡنَا عَلَيۡهِمۡ كُلَّ شَيۡءٖ قُبُلٗا مَّا كَانُواْ
لِيُؤۡمِنُوٓاْ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ وَلَٰكِنَّ أَكۡثَرَهُمۡ
يَجۡهَلُونَ ١١١

१११) र यदि हामीले तिनीहरू छेउ फरिश्ताहरूलाई (स्वर्गदुतहरू) पठाई दिएकोभए र मृतकहरूले तिनीहरूसँग कुरा गर्न थालेकोभए र हामीले तिनीहरूको अगाडि संसारका सबै कुरा उपस्थित गराई दिएकोभए पनि यिनीहरूले ईमान ल्याउने थिएनन् । जबसम्म अल्लाह स्वयम्ले चाँहदैन् । तर उनीहरू मध्ये अधिकांश अज्ञानी छन् ।

وَكَذَٰلِكَ جَعَلۡنَا لِكُلِّ نَبِيٍّ عَدُوّٗا شَيَٰطِينَ
ٱلۡإِنسِ وَٱلۡجِنِّ يُوحِي بَعۡضُهُمۡ إِلَىٰ بَعۡضٖ
زُخۡرُفَ ٱلۡقَوۡلِ غُرُورٗاۚ وَلَوۡ شَآءَ رَبُّكَ مَا فَعَلُوهُۖ
فَذَرۡهُمۡ وَمَا يَفۡتَرُونَ ١١٢

११२) र यसै प्रकारले हामीले मानिस तथा जिन्नमध्येका शैतानहरूलाई हरेक पैगम्बरको शत्रु बनाएका थियौं । तिनीहरू मध्ये केहीले एक अर्काको मनमा चिल्लो चाप्लुसी कुराहरू धोखा दिने उद्देश्यले गर्दथें । यदि अल्लाहले चाहेको भए तिनीहरूले त्यस्तो काम गर्ने थिएनन् । तसर्थ तिनीहरूलाई तथा तिनीहरूले जे जति मन गढन्तरूपमा गर्दछन्, सबै छाडिदेऊ ।

وَلِتَصۡغَىٰٓ إِلَيۡهِ أَفۡـِٔدَةُ ٱلَّذِينَ لَا يُؤۡمِنُونَ
بِٱلۡأٓخِرَةِ وَلِيَرۡضَوۡهُ وَلِيَقۡتَرِفُواْ مَا هُم
مُّقۡتَرِفُونَ ١١٣

११३) र जुन मानिसले परलोकको दिनलाई विश्वास गर्दैनन् तिनीहरूको हृदय तिनीहरूको कुरा (धोखा) तिर प्रवृत होउन् र त्यसलाई रुचाउन् र तिनीहरूले गर्नेकाममा उनीहरू पनि लिप्त रहुन् ।

أَفَغَيْرَ اللَّهِ أَبْتَغِي حَكَمًا وَهُوَ الَّذِي أَنزَلَ إِلَيْكُمُ الْكِتَابَ مُفَصَّلًا ۚ وَالَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يَعْلَمُونَ أَنَّهُ مُنَزَّلٌ مِّن رَّبِّكَ بِالْحَقِّ ۖ فَلَا تَكُونَنَّ مِنَ الْمُمْتَرِينَ ﴿١١٤﴾

११४) के म अल्लाहलाई छोडेर अरु कसैलाई न्यायगर्नको लागि खोजूँ जब कि उसले पूर्ण विस्तारकासाथ एउटा किताब तिम्रोलागि पठाएको छ? यसका शीर्षकहरू स्पष्ट संग वर्णन गरिएका छन् । र जसलाई हामीले (पहिले) किताब प्रदान गऱ्यौं तिनीहरूले जान्दछन् कि त्यो सत्य किताब तिम्रो पालनकर्ताको तर्फबाट उतारिएको हो । तसर्थ तपाई शंका गर्ने मध्येको नहुनु ।

وَتَمَّتْ كَلِمَتُ رَبِّكَ صِدْقًا وَعَدْلًا ۚ لَّا مُبَدِّلَ لِكَلِمَاتِهِ ۚ وَهُوَ السَّمِيعُ الْعَلِيمُ ﴿١١٥﴾

११५) र तिम्रो पालनकर्ताको कुरा सत्यता र न्यायको दृष्टिले पूर्ण छ त्यसको आदेश कसैले परिवर्तन गर्न सक्दैन र ऊ सबै सुन्दछ र जान्दछ ।

وَإِن تُطِعْ أَكْثَرَ مَن فِي الْأَرْضِ يُضِلُّوكَ عَن سَبِيلِ اللَّهِ ۚ إِن يَتَّبِعُونَ إِلَّا الظَّنَّ وَإِنْ هُمْ إِلَّا يَخْرُصُونَ ﴿١١٦﴾

११६) प्रायः यस संसारमा धेरै यस्ता मानिसहरू छन् यदि तपाईले तिनीहरूले भनेको कुरा मान्न थाल्नु भयो भने, तिनीहरूले तपाईलाई अल्लाहको बाटोबाट विचलित गराइदिनेछन् । यिनीहरू अप्रमाणिक विचारमा लाग्दछन् र अटकल बाजीको कुरा गर्दछन् ।

إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ مَن يَضِلُّ عَن سَبِيلِهِ ۖ وَهُوَ أَعْلَمُ بِالْمُهْتَدِينَ ﴿١١٧﴾

११७) तिम्रो पालनकर्ता तिनीहरूलाई राम्ररी जान्दछ कि को उसको बाटोबाट विचलित छ र तिनीहरूलाई पनि राम्ररी जान्दछ जो उस्को बाटोमा हिडिराखेका छन् ।

فَكُلُوا مِمَّا ذُكِرَ اسْمُ اللّٰهِ عَلَيْهِ إِنْ كُنْتُمْ بِاٰيٰتِهٖ مُؤْمِنِيْنَ ﴿١١٨﴾

११८) तसर्थः जुन जनावरमा अल्लाहको नाम लिइन्छ त्यसबाट खानु यदि तिमी अल्लाहका आयतहरूमाथि ईमान राख्दछौ भने ।

وَمَا لَكُمْ أَلَّا تَأْكُلُوا مِمَّا ذُكِرَ اسْمُ اللّٰهِ عَلَيْهِ وَقَدْ فَصَّلَ لَكُمْ مَّا حَرَّمَ عَلَيْكُمْ إِلَّا مَا اضْطُرِرْتُمْ إِلَيْهِ ۗ وَإِنَّ كَثِيْرًا لَّيُضِلُّوْنَ بِأَهْوَآئِهِمْ بِغَيْرِ عِلْمٍ ۗ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِالْمُعْتَدِيْنَ ﴿١١٩﴾

११९) अनि के कारणले जुन जनावरमा अल्लाहको नाम लिइएकोछ तिमीले त्यसबाट खाँदैनौ, जबकि तिम्रो लागि वर्जित गरिएका सबै जनावरहरू एक एक गरी वर्णन गरी सकिएको छ । तर त्यस अवस्था बाहेक जब कि ती कुरा खानको निम्ति बाध्य भइहाल्छौ तर धेरै जसो मानिसहरू बिना जानी बुझ्की आफ्नो इच्छा पूर्तिका लागि मानिसहरूलाई ढाँटीरहेका छन् । यसमा कुनै शंका छैन कि जो सीमा भन्दा बाहिर गई हाल्छन्, तिनीहरूलाई तिम्रो पालनकर्ता राम्ररी जान्दछ ।

وَذَرُوا ظَاهِرَ الْإِثْمِ وَبَاطِنَهٗ ۗ إِنَّ الَّذِيْنَ يَكْسِبُوْنَ الْإِثْمَ سَيُجْزَوْنَ بِمَا كَانُوْا يَقْتَرِفُوْنَ ﴿١٢٠﴾

१२०) र तिमीले देखिने र नदेखिने हरेक प्रकारको पापलाई परित्याग गरिहाल । जुन मानिसहरूले पाप कमाउँदछन् तिनीहरू निश्चयनै निकट भविष्यमा आफ्नो यस कमाईको सजाय पाउनेछन् ।

وَلَا تَأْكُلُوا مِمَّا لَمْ يُذْكَرِ اسْمُ اللّٰهِ عَلَيْهِ وَإِنَّهٗ لَفِسْقٌ ۗ وَإِنَّ الشَّيٰطِيْنَ لَيُوْحُوْنَ إِلٰٓى أَوْلِيٰٓئِهِمْ لِيُجَادِلُوْكُمْ ۚ وَإِنْ أَطَعْتُمُوْهُمْ إِنَّكُمْ لَمُشْرِكُوْنَ ﴿١٢١﴾

१२१) जुन जनावरमा अल्लाहको नाम लिइन्न त्यसलाई नखाऊ किन भने निःसन्देह त्यो आज्ञाको उल्लंघन हो । र शैतानहरूले (यस्ताकुराहरू) आफ्ना साथीहरूको हृदयमा हालिदिन्छन्,

जस्कोकारण तिनीहरूले तिमी संग झगडा गरुन् । यदि तिमी तिनीहरूले भने अनुसार हिड्यौ भने निश्चय नै तिमी पनि मुश्रिक नै हुनछौ ।

أَوَمَنْ كَانَ مَيْتًا فَأَحْيَيْنَاهُ وَجَعَلْنَا لَهُ نُورًا يَمْشِي بِهِ فِي النَّاسِ كَمَنْ مَثَلُهُ فِي الظُّلُمَاتِ لَيْسَ بِخَارِجٍ مِنْهَا ۚ كَذَٰلِكَ زُيِّنَ لِلْكَافِرِينَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٢٢﴾

१२२) के त्यो व्यक्ति जुन पहिले मृत थियो र हामीले उसलाई जिवन प्रदान गऱ्यौं र जसको लागि एउटा प्रकाश उपलब्ध गरायौं जसको साथमा ऊ व्यक्तिहरू बिच हिडने-डुल्ने गर्दछ । के त्यस्तो व्यक्ति, त्यो व्यक्ति सरह हुन सक्तछ जुन अन्धकारमा छ र कुनै पनि तरिकाले त्यहाँबाट बाहिर निस्कन सक्दैन ? यस्तै अधर्मीहरूको लागी उनीहरूका क्रियाकलापहरू आकर्षक लाग्ने गर्दछन् ।

وَكَذَٰلِكَ جَعَلْنَا فِي كُلِّ قَرْيَةٍ أَكَابِرَ مُجْرِمِيهَا لِيَمْكُرُوا فِيهَا ۖ وَمَا يَمْكُرُونَ إِلَّا بِأَنْفُسِهِمْ وَمَا يَشْعُرُونَ ﴿١٢٣﴾

१२३) यस्तै प्रकारले हामीले प्रत्येक बस्तीमा तिनीहरूका ठूला-बडालाई नै अपराध गर्न लगायौं, जसबाट ती ठाउँमा तिनीहरूले छलकपट (षड्यन्त्र) को जाल फैलाई राखुन् । वास्तवमा तिनीहरू आफ्नो छलकपटको जालमा स्वयम् फस्दैछन् तर तिनीहरू यस बारे अनभिज्ञ छन् ।

وَإِذَا جَاءَتْهُمْ آيَةٌ قَالُوا لَنْ نُؤْمِنَ حَتَّىٰ نُؤْتَىٰ مِثْلَ مَا أُوتِيَ رُسُلُ اللَّهِ ۘ اللَّهُ أَعْلَمُ حَيْثُ يَجْعَلُ رِسَالَتَهُ ۗ سَيُصِيبُ الَّذِينَ أَجْرَمُوا صَغَارٌ عِنْدَ اللَّهِ وَعَذَابٌ شَدِيدٌ بِمَا كَانُوا يَمْكُرُونَ ﴿١٢٤﴾

१२४) र जब तिनीहरू सामु कुनै आयत (निशानी) आउँदछ त तिनीहरूले भन्दछन् कि, "जुन किसिमको रिसालत अल्लाहका रसूलहरूलाई

दिइएको छ, त्यस्तै रिसालत हामीहरूलाई नदिऊञ्जेल हामीले कदापि ईमान ल्याउने छैनौं'' । अल्लाहले राम्ररी जान्दछ कि, आफ्नो सन्देश पुऱ्याउने काम कोबाट लिने र कुन प्रकारले दिने । नजिक छ त्यो समय जब यी अपराधिहरूले आफूले गरेको क्रियाकलापको बदलामा अल्लाह कहाँ अपमानित हुनेछन् र कठोर यातना भोग्नुपर्नेछ ।

فَمَنْ يُرِدِ اللّٰهُ اَنْ يَّهْدِيَهٗ يَشْرَحْ صَدْرَهٗ لِلْاِسْلَامِ ۚ وَمَنْ يُّرِدْ اَنْ يُّضِلَّهٗ يَجْعَلْ صَدْرَهٗ ضَيِّقًا حَرَجًا كَاَنَّمَا يَصَّعَّدُ فِى السَّمَآءِ ۚ كَذٰلِكَ يَجْعَلُ اللّٰهُ الرِّجْسَ عَلَى الَّذِيْنَ لَا يُؤْمِنُوْنَ ﴿١٢٥﴾

१२५) तसर्थ जुन मानिसलाई अल्लाहले चाहन्छ कि, मार्गदर्शन प्राप्त गरोस्, उसको छाती इस्लामको लागि फराकिलो गरिदिन्छ र जसलाई विचलित गर्ने इच्छा राख्दछ उसको छात्तीलाई साँगुरो पारिदिन्छ मानौ त्यो आकाशमा चढिराखेको छ र यस्तै अल्लाहले पापको दुर्गन्ध त्यस व्यक्तिमाथि थोपारिदिन्छ । जसले ईमान ल्याउदैन ।

وَهٰذَا صِرَاطُ رَبِّكَ مُسْتَقِيْمًا ۗ قَدْ فَصَّلْنَا الْاٰيٰتِ لِقَوْمٍ يَّذَّكَّرُوْنَ ﴿١٢٦﴾

१२६) यही नै तिम्रो पालनकर्ताको सिधा मार्ग हो । हामीले नसीहत मान्ने व्यक्तिहरूको लागि यी आयतहरूलाई स्पष्ट वर्णन गरि दिएका छौं ।

لَهُمْ دَارُ السَّلٰمِ عِنْدَ رَبِّهِمْ وَهُوَ وَلِيُّهُمْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٢٧﴾

१२७) तिनीहरूको लागि तिनीहरूको पालनकर्ता कहाँ शान्ति घर छ र तिनीहरूले राम्रो कर्मको नीति अपनाए बापत अल्लाह नै तिनीहरूको संरक्षक हो ।

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيعًا يَٰمَعْشَرَ الْجِنِّ قَدِ اسْتَكْثَرْتُم مِّنَ الْإِنسِ ۖ وَقَالَ أَوْلِيَاؤُهُم مِّنَ الْإِنسِ رَبَّنَا اسْتَمْتَعَ بَعْضُنَا بِبَعْضٍ وَبَلَغْنَا أَجَلَنَا الَّذِي أَجَّلْتَ لَنَا ۚ قَالَ النَّارُ مَثْوَاكُمْ خَالِدِينَ فِيهَا إِلَّا مَا شَاءَ اللَّهُ ۗ إِنَّ رَبَّكَ حَكِيمٌ عَلِيمٌ ﴿١٢٨﴾

१२८) जुन दिन अल्लाहले ती सबै प्राणी (जिन्न र मानिसहरू) लाई एकत्रित गर्नेछ र जिन्नहरूलाई सम्बोधित गर्दै भन्ने छ कि, ‘‘हे जिन्नहरूको समूह, तिमीहरूले त मानिसहरूबाट धेरै फाइदा लिइसक्यौ’’। त्यसबेला मानिस मध्ये तिनका जो मित्र थिए, तिनीहरू निवेदन गर्नेछन् कि, ‘‘पालनहार ! हामी मध्ये एकले अर्काबाट धेरै फाइदा लिने गर्‍यौं, र अब हामी त्यस म्यादमा पुगिसकेका छौं जुन तिमीले हाम्रो लागि (निर्धारित) गरिदिएका थियौ’’ अल्लाहले भन्ने छ कि, ‘‘तिमी सबैको ठेगाना अब नर्क हुनेछ । त्यसमा तिमी सदैव रहने छौ ।’’ तर जसलाई अल्लाहले बचाउन चाहन्छ । उसको कुरा अर्कैछ । निःसन्देह तिम्रो पालनकर्ता ठूलो तत्वदर्शी र सर्वज्ञ छ ।

وَكَذَٰلِكَ نُوَلِّي بَعْضَ الظَّالِمِينَ بَعْضًا بِمَا كَانُوا يَكْسِبُونَ ﴿١٢٩﴾

१२९) र यसै प्रकार (परलोकमा) हामीले अत्याचारीहरूलाई, तिनीहरूका क्रियाकलापले गर्दा जुन कि तिनीहरूले गर्दथे, एक अर्काको (नर्कको) साथी बनाई दिनेछौ ।

يَٰمَعْشَرَ الْجِنِّ وَالْإِنسِ أَلَمْ يَأْتِكُمْ رُسُلٌ مِّنكُمْ يَقُصُّونَ عَلَيْكُمْ آيَاتِي وَيُنذِرُونَكُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا ۚ قَالُوا شَهِدْنَا عَلَىٰ أَنفُسِنَا ۖ وَغَرَّتْهُمُ الْحَيَاةُ الدُّنْيَا وَشَهِدُوا عَلَىٰ أَنفُسِهِمْ أَنَّهُمْ كَانُوا كَافِرِينَ ﴿١٣٠﴾

१३०) ‘‘हे जिन्न र मानिसहरूको समूह । के तिमीहरूनिर तिमीहरूमध्येबाटै पैगम्बरहरू आएका थिएनन्, जसले मेरा आयतहरू (नियमहरू) तिमीलाई पढेर सुनाउँदथे र तिमीलाई आजको दिनको खबर दिदैनथे ?’’ तिनीहरूले

विन्ती गर्ने छन् कि, “हो आउँदथे हामी आफ्ना पाप आफै स्वीकार्दछौं ।” यिनीहरूलाई सांसारिक जीवनले भ्रममा पारिराखेको छ र त्यस समयमा तिनीहरू स्यवम्ले आफ्नो विरुद्ध आफै साक्षी हुने छन कि, तिनिहरू काफिर थिए ।”

ذٰلِكَ اَنْ لَّمْ يَكُنْ رَّبُّكَ مُهْلِكَ الْقُرٰى بِظُلْمٍ وَّاَهْلُهَا غٰفِلُوْنَ ﴿١٣١﴾

१३१) (हे मुहम्मद स.अ. ! यो यस कारण) हो कि तपाईको पालनकर्ताले कुनै बस्तीका बासिन्दाहरूलाई उनीहरूको कुफ्रको कारण यस अवस्थामा समाप्त गर्दैन कि त्यहाँका बासिन्दाहरू सत्यदेखि अपरिचित हुन ।

وَلِكُلٍّ دَرَجٰتٌ مِّمَّا عَمِلُوْا ؕ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا يَعْمَلُوْنَ ﴿١٣٢﴾

१३२) र कर्मलाई दृष्टिगत गरी सबै व्यक्तिका दर्जाहरू निर्धारित छन् र जुन काम यिनीहरूले गर्दछन्, अल्लाह त्यसबाट अनभिज्ञ छैन ।

وَرَبُّكَ الْغَنِىُّ ذُو الرَّحْمَةِ ؕ اِنْ يَّشَاْ يُذْهِبْكُمْ وَيَسْتَخْلِفْ مِنْ بَعْدِكُمْ مَّا يَشَآءُ كَمَآ اَنْشَاَكُمْ مِّنْ ذُرِّيَّةِ قَوْمٍ اٰخَرِيْنَ ﴿١٣٣﴾

१३३) र तपाईको रब धेरै सम्पन्न र दयावान हो, उसले चाहेको खण्डमा तिमी सबैलाई (दुनियाँबाट) समाप्त गर्न सक्छ र तिम्रो ठाउँमा जसलाई चाहन्छ उपस्थित गर्न सक्छ, जस्तो कि तिमीलाई उसले अरु मानिसहरूको वंशबाट सृष्टि गरेको छ ।

اِنَّ مَا تُوْعَدُوْنَ لَاٰتٍ ۙ وَّمَآ اَنْتُمْ بِمُعْجِزِيْنَ ﴿١٣٤﴾

१३४) कुनै सन्देह छैन कि जुन वचन तिमीलाई दिइन्छ त्यो पूरा हुनेवाला छ र तिमीमा त्यसलाई रोक्न सामर्थ्य छैन ।

१३५) (हे नबी) भनिदिनुस् कि मानिसहरू हो! तिमीहरू आफ्नो ठाउँमा कर्म गर्दै जानु र म आफ्नो ठाउँमा कर्म गर्दै रहन्छु । चाडै नै तिमीले प्रतिफल थाहा पाउने छौ कि आखिरतमा (बहिश्त) कस्को घर हुनेछ । निःसन्देह यो सत्य छ कि अत्याचारीहरूलाई कहिलै सफलता प्राप्त हुँदैन ।

قُلْ يٰقَوْمِ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ اِنِّيْ عَامِلٌ ۚ فَسَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ تَكُوْنُ لَهٗ عَاقِبَةُ الدَّارِ ؕ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿١٣٥﴾

१३६) यिनीहरूले नै सृष्टि गरेको कुराहरू कृषि र चौपायामा अल्लाहको एक भाग निर्धारित गरेकाछन् र आफ्ना विचारले भन्दछन् कि यो भाग अल्लाहको र यो हाम्रो साझेदारहरूको हो (मूर्तिहरूको) तसर्थ जुन (भाग) तिनीहरूको साझेदारको हुन्छ, त्यो अल्लाहतिर पुग्दैन र जुन (भाग) अल्लाहको हुन्छ त्यो तिनका साझेदारहरूतिर पुगीहाल्छ । कति नराम्रो निर्णय यिनीहरूले गर्दछन् ।

وَجَعَلُوْا لِلّٰهِ مِمَّا ذَرَاَ مِنَ الْحَرْثِ وَالْاَنْعَامِ نَصِيْبًا فَقَالُوْا هٰذَا لِلّٰهِ بِزَعْمِهِمْ وَهٰذَا لِشُرَكَآئِنَا ۚ فَمَا كَانَ لِشُرَكَآئِهِمْ فَلَا يَصِلُ اِلَى اللّٰهِ ۚ وَمَا كَانَ لِلّٰهِ فَهُوَ يَصِلُ اِلٰى شُرَكَآئِهِمْ ؕ سَآءَ مَا يَحْكُمُوْنَ ﴿١٣٦﴾

१३७) यसै प्रकारले धेरै जसो बहुदेववादी-हरूको विचारमा तिनका साझेदारहरूले आफ्ना सन्तानहरूलाई मारिदिने कुरा सुहाँउदो बनाईदिएका छन् । ताकि तिनीहरूलाई नष्ट पारिदेऊन् र तिनको लागि तिनको धर्मलाई संदिग्ध गरिदेऊन् । र यदि अल्लाहले चाहेको भए तिनीहरू यस्तो गर्न सक्दैनथे । तसर्थ तिनीहरूलाई र तिनीहरूको मिथ्याकुरालाई छाडिदिनुस् ।

وَكَذٰلِكَ زَيَّنَ لِكَثِيْرٍ مِّنَ الْمُشْرِكِيْنَ قَتْلَ اَوْلَادِهِمْ شُرَكَآؤُهُمْ لِيُرْدُوْهُمْ وَلِيَلْبِسُوْا عَلَيْهِمْ دِيْنَهُمْ ؕ وَلَوْ شَآءَ اللّٰهُ مَا فَعَلُوْهُ فَذَرْهُمْ وَمَا يَفْتَرُوْنَ ﴿١٣٧﴾

وَقَالُوا هَٰذِهِ أَنْعَامٌ وَحَرْثٌ حِجْرٌ لَا يَطْعَمُهَا إِلَّا مَن نَّشَاءُ بِزَعْمِهِمْ وَأَنْعَامٌ حُرِّمَتْ ظُهُورُهَا وَأَنْعَامٌ لَّا يَذْكُرُونَ اسْمَ اللَّهِ عَلَيْهَا افْتِرَاءً عَلَيْهِ ۚ سَيَجْزِيهِم بِمَا كَانُوا يَفْتَرُونَ ﴿١٣٨﴾

१३८) तिनीहरूले आफ्नो विचारमा यो पनि भन्दै छन्ः कि "यो जनावर र खेती वर्जित र सुरक्षित छन् जसको उपभोग सबैकालागि जायज छैन केवल त्यस व्यक्तिले उपभोग गर्न सक्छ जसलाई हामीले चाहनेछौं ।" र केही चौपाया यस्ता छन् कि तिनको पिठ्यूमा चढ्न वा केही कुरा बोकाउन रोक लगाइएको छ । र केही पशुहरू यस्ता छन् जसमाथि (काट्ने जब्ह गर्ने बेला) अल्लाहको नाम लिदैनन् । यी सबै अल्लाह माथि यिनीहरूले रचेका असत्य कुरा हुन् । अल्लाहले तिनीहरूलाई तिनको झूठको प्रतिफल छिटै नै दिनेछ ।

وَقَالُوا مَا فِي بُطُونِ هَٰذِهِ الْأَنْعَامِ خَالِصَةٌ لِّذُكُورِنَا وَمُحَرَّمٌ عَلَىٰ أَزْوَاجِنَا ۖ وَإِن يَكُن مَّيْتَةً فَهُمْ فِيهِ شُرَكَاءُ ۚ سَيَجْزِيهِمْ وَصْفَهُمْ ۚ إِنَّهُ حَكِيمٌ عَلِيمٌ ﴿١٣٩﴾

१३९) यो पनि भन्छन्ः कि, जुन कुरा (बच्चा) यी चौपायहरूको पेटमा छन् त्यो विशेष रूपले हाम्रा पुरुषहरूका लागि हो र हाम्रा स्वास्नी मानिसहरूका लागि त्यो होइन । यदि त्यो बच्चा मृतक जन्मन्छ भने त्यसमा सबैको साझेदारी छ (सबैले खान सक्छन्) । छिट्टै अल्लाहले तिनीहरूलाई तिनका मन गढन्त कपोलकल्पित कुराको सजाय दिनेछ । निःसन्देह ऊ ठूलो तत्वदर्शी र सर्वज्ञ छ ।

قَدْ خَسِرَ الَّذِينَ قَتَلُوا أَوْلَادَهُمْ سَفَهًا بِغَيْرِ عِلْمٍ وَحَرَّمُوا مَا رَزَقَهُمُ اللَّهُ افْتِرَاءً عَلَى اللَّهِ ۚ قَدْ ضَلُّوا وَمَا كَانُوا مُهْتَدِينَ ﴿١٤٠﴾

१४०) निःसन्देह ती मानिसहरू घाटामा परीहाले जुन आफ्नो सन्तानलाई मूर्खता र अज्ञानताको कारणले हत्या

गरे र अल्लाहमाथि मिथ्याकुरा गर्दा उसले प्रदान गरेको जीविकालाई वर्जित बनाए । वास्तवमा तिनीहरू पथ विचलित भईहाले र कहिले पनि उनीहरू सत्य मार्गदर्शन प्राप्त गर्ने मध्येका हुने छैनन् ।

وَهُوَ الَّذِيٓ اَنْشَاَ جَنّٰتٍ مَّعْرُوْشٰتٍ وَّغَيْرَ مَعْرُوْشٰتٍ وَّالنَّخْلَ وَالزَّرْعَ مُخْتَلِفًا اُكُلُهٗ وَالزَّيْتُوْنَ وَالرُّمَّانَ مُتَشَابِهًا وَّغَيْرَ مُتَشَابِهٍ ۚ كُلُوْا مِنْ ثَمَرِهٖٓ اِذَآ اَثْمَرَ وَاٰتُوْا حَقَّهٗ يَوْمَ حَصَادِهٖ ۖ وَلَا تُسْرِفُوْا ۚ اِنَّهٗ لَا يُحِبُّ الْمُسْرِفِيْنَ ﴿١٤١﴾

१४१) र उही हो जसले धेरै बगैचाहरू उत्पन्न गरायो । टाटी, बान्नो वा थाङ्गरामा चढने लतावाला र छानामाथि नचढने बिना लतावाला पनि । र खजूर र खेती पनि जसबाट विभिन्न प्रकारका खाद्य पदार्थ प्राप्त हुन्छन्, जैतून र अनार पनि जो एक-आपसमा मिल्दछन् र फरक पनि हुन्छन् । यिनीहरूको फल खानु जुन दिन ती फल टिपिन्छ वा काटिन्छ तिनीहरूको भाग (दान) पनि दिनु र सीमाभन्दा अघि नबढ, अल्लाहले सीमादेखि अघि बढ्नेलाई मायाँ गर्दैन ।

وَمِنَ الْاَنْعَامِ حَمُوْلَةً وَّفَرْشًا ۚ كُلُوْا مِمَّا رَزَقَكُمُ اللّٰهُ وَلَا تَتَّبِعُوْا خُطُوٰتِ الشَّيْطٰنِ ۚ اِنَّهٗ لَكُمْ عَدُوٌّ مُّبِيْنٌ ﴿١٤٢﴾

१४२) र उसले चौपाया मध्ये भारी बोक्नको लागि केही ठूलो र केही सानो जनावर सृष्टि गऱ्यो । अल्लाहले तिमीलाई जुन कुरा प्रदान गरेको छ त्यसको उपभोग गर र शैतानको अनुशरण नगर किनकि त्यो तिम्रो स्पष्ट शत्रु हो ।

ثَمٰنِيَةَ اَزْوَاجٍ ۚ مِنَ الضَّاْنِ اثْنَيْنِ وَمِنَ الْمَعْزِ اثْنَيْنِ ۗ قُلْ ءٰٓالذَّكَرَيْنِ حَرَّمَ اَمِ

१४३) उसले आठ भाले-पोथी चौपायाहरू सृष्टि गऱ्यो दुई भेडाबाट र दुई

الْأُنْثَيَيْنِ أَمَّا اشْتَمَلَتْ عَلَيْهِ أَرْحَامُ الْأُنْثَيَيْنِ ۖ نَبِّئُونِي بِعِلْمٍ إِنْ كُنْتُمْ صَادِقِينَ ﴿١٤٣﴾

बाखाबाट । हे पैगम्बर ! तिनीहरूसँग भन्नुस् कि के अल्लाहले दुवैका भालेहरूलाई त्याज्य बनाएको छ वा दुवैको पोथीहरूलाई ? वा उसलाई जुन दुवै पोथीको गर्भमा हुने छ ? यदि तिमी साँचो हौ भने कुनै तर्कको आधारमा मलाई भन ।''

وَمِنَ الْإِبِلِ اثْنَيْنِ وَمِنَ الْبَقَرِ اثْنَيْنِ ۗ قُلْ آلذَّكَرَيْنِ حَرَّمَ أَمِ الْأُنْثَيَيْنِ أَمَّا اشْتَمَلَتْ عَلَيْهِ أَرْحَامُ الْأُنْثَيَيْنِ ۖ أَمْ كُنْتُمْ شُهَدَاءَ إِذْ وَصَّاكُمُ اللَّهُ بِهَٰذَا ۚ فَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا لِيُضِلَّ النَّاسَ بِغَيْرِ عِلْمٍ ۗ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿١٤٤﴾

१४४) र दुई ऊँटको जातिबाट र दुई-दुई गाईको जातिबाट (तिनीहरूसित) सोध्नुस् कि, के अल्लाहले दुवैका भालेलाई त्याज्य गरेको छ वा दुवैको पोथीहरूलाई? वा त्यसलाई जुनकि दुवै पोथीको गर्भमा छ ? के तिमी त्यस समयमा उपस्थित थियौ जब अल्लाहले (अवैध हुने) आदेश तिनीहरूलाई दिएको थियो ? र त्यस मानिस भन्दा ठूलो अन्यायी अरु को हुन सक्छ जसले मानिसहरूलाई मार्ग विचलित गर्नको लागि अज्ञानतापूर्वक अल्लाह माथि झूठो कुराको दोषारोपण गर्दछ । कुनै सन्देह छैन कि अल्लाह अत्याचारीहरूलाई सही मार्ग देखाउँदैन ।''

قُلْ لَا أَجِدُ فِي مَا أُوحِيَ إِلَيَّ مُحَرَّمًا عَلَىٰ طَاعِمٍ يَطْعَمُهُ إِلَّا أَنْ يَكُونَ مَيْتَةً أَوْ دَمًا مَسْفُوحًا أَوْ لَحْمَ خِنْزِيرٍ فَإِنَّهُ رِجْسٌ أَوْ فِسْقًا أُهِلَّ لِغَيْرِ اللَّهِ بِهِ ۚ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَلَا عَادٍ فَإِنَّ رَبَّكَ غَفُورٌ رَحِيمٌ ﴿١٤٥﴾

१४५) हे नबी, यिनीहरूलाई भन्नुस्: ''कि, जुन आदेश म माथि ''वह्य'' मार्फत उतारिएको छ त्यसमा मैले कुनै चिज त्यस्तो पाउँदिन जुन खानेले खान्छन् तर त्यसललाई वर्जित गरिएको होस् । त्यस बाहेक

यदि त्यो मृतक पशु होस् वा बगिरहेको रगत वा सुँगुरको मासु होस् किनभने यी सबै बिल्कुल अपवित्र हुन् वा अर्को कुनै कुरा जुन मर्यादाको खिलाफ होस् । जसमा अल्लाह बाहेक अरु कसैको नाम लिएको हुन्छ, तर बिवस भएको अवस्था बाहेक, यस शर्तमा कि बिवशतामा खाने मानिसले स्वादको लागि खाएको नहोस् न त ऊ सीमालाई नै नाघ्ने व्यक्ति छ । तब निश्चय नै तिम्रो पालनकर्ता क्षमादाता र दयावान छ ।

وَعَلَى الَّذِينَ هَادُوا حَرَّمْنَا كُلَّ ذِي ظُفُرٍ ۖ وَمِنَ الْبَقَرِ وَالْغَنَمِ حَرَّمْنَا عَلَيْهِمْ شُحُومَهُمَا إِلَّا مَا حَمَلَتْ ظُهُورُهُمَا أَوِ الْحَوَايَا أَوْ مَا اخْتَلَطَ بِعَظْمٍ ۚ ذَٰلِكَ جَزَيْنَاهُم بِبَغْيِهِمْ ۖ وَإِنَّا لَصَادِقُونَ ﴿١٤٦﴾

१४६) र यहूदीहरूको निम्ति हामीले नङ्ग भएका सम्पूर्ण जनावरहरूलाई वर्जित बनाएका थियौं, र गाई र बाख्राको बोसो हराम गरिदिएका थियौं, तर त्यस बाहेक जुन (बोसो) तिनीहरूको पिठ्यूमा टाँसिएको हुन्छ वा आन्द्रामा लागेको हुन्छ वा हाडमै टासिएको हुन्छ । यो सजाय हामीले तिनीहरूलाई तिनीहरूको बदमाशीको कारण दिएका थियौं । हामी त साँचो भन्नेवाला हौं ।

فَإِن كَذَّبُوكَ فَقُل رَّبُّكُمْ ذُو رَحْمَةٍ وَاسِعَةٍ وَلَا يُرَدُّ بَأْسُهُ عَنِ الْقَوْمِ الْمُجْرِمِينَ ﴿١٤٧﴾

१४७) यदि तिनीहरूले तपाईलाई झूठा भन्छन् त भनिदिनुस् कि तिम्रो पालनकर्ता अत्यन्त दयावान छ तर अत्याचारीहरूका लागि उसको सजाय अटल छ ।

سَيَقُولُ الَّذِينَ أَشْرَكُوا لَوْ شَاءَ اللَّهُ مَا أَشْرَكْنَا

१४८) यी मुश्रिकहरूले (उत्तरमा) भन्ने

وَلَآ ءَابَآؤُنَا وَلَا حَرَّمْنَا مِن شَيْءٍ ۚ كَذَٰلِكَ كَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ حَتَّىٰ ذَاقُوا بَأْسَنَا ۗ قُلْ هَلْ عِندَكُم مِّنْ عِلْمٍ فَتُخْرِجُوهُ لَنَا ۖ إِن تَتَّبِعُونَ إِلَّا الظَّنَّ وَإِنْ أَنتُمْ إِلَّا تَخْرُصُونَ ﴿١٤٨﴾

छन्: कि, यदि अल्लाहले चाहेको भए हामीले अल्लाहको साझेदार ठहराउने थिएनौं र न त हाम्रा बाबु बाजेहरूले नै गर्दथे न त हामीले कुनै कुरालाई त्याज्य ठहराउदथ्यौं, यस्तै यिनीहरूका पूर्वजले पनि सत्य कुरालाई गलत भन्ने गरेका थिए, यहाँसम्म कि हाम्रो सजायको स्वाद तिनीहरूले चाखे । (तिनीहरूलाई) भन्नुस् कि, के ''तिमीहरूसँग कुनै प्रमाण छ । जसलाई हाम्रो सामु प्रस्तुत गर्न सक्छौ ? तिमीहरू त मात्र अनुमानमा हिंड्दछौ र मिथ्या कुरा गर्दछौ ।''

قُلْ فَلِلَّهِ الْحُجَّةُ الْبَالِغَةُ ۖ فَلَوْ شَاءَ لَهَدَاكُمْ أَجْمَعِينَ ﴿١٤٩﴾

१४९) भन्नुस् कि,पूरै विवाद अल्लाहकै लागि रह्यो यदि उसले चाहेको भए तिमी सबैलाई मार्गदर्शन प्रदान गर्ने थियो ।

قُلْ هَلُمَّ شُهَدَاءَكُمُ الَّذِينَ يَشْهَدُونَ أَنَّ اللَّهَ حَرَّمَ هَٰذَا ۖ فَإِن شَهِدُوا فَلَا تَشْهَدْ مَعَهُمْ ۚ وَلَا تَتَّبِعْ أَهْوَاءَ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَالَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ وَهُم بِرَبِّهِمْ يَعْدِلُونَ ﴿١٥٠﴾

१५०) भन्नुस् कि, आफ्नो साक्षीहरूलाई ल्याऊ, जसले गवाही देऊन् कि अल्लाहले यी कुराहरूलाई त्याज्य बनाएको छ । अनि यदि तिनीहरू आएर गवाही दिन्छन् भने तपाई तिनीहरूको साथ साक्षी नबस्नुस् र कदापि तिनीहरूको इच्छाको पछि नहिड्नु जसले हाम्रा आयतहरूलाई गलत भनिराखेका छन् र जो परलोकको दिनमा विश्वास गर्दैनन्, र आफ्नो पालनकर्ताको समकक्ष अरुलाईपनि ठान्दछन् ।

قُلْ تَعَالَوْا أَتْلُ مَا حَرَّمَ رَبُّكُمْ عَلَيْكُمْ أَلَّا تُشْرِكُوا بِهِ شَيْئًا وَبِالْوَالِدَيْنِ إِحْسَانًا ۖ وَلَا تَقْتُلُوا أَوْلَادَكُم مِّنْ إِمْلَاقٍ ۖ نَّحْنُ نَرْزُقُكُمْ وَإِيَّاهُمْ ۖ وَلَا تَقْرَبُوا الْفَوَاحِشَ مَا ظَهَرَ مِنْهَا وَمَا بَطَنَ ۖ وَلَا تَقْتُلُوا النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَعْقِلُونَ ﴿١٥١﴾

१५१) (हे नबी) भन्नुस् कि (हे मानिसहरू !) आऔ मैले तिमीहरूलाई ती कुरा सुनाउँछु जस्को (विरोध गर्न) तिम्रो पालनकर्ताले तिम्रो लागि रोक लगाएको छ, ती यी हुन् कि कुनै कुरालाई अल्लाहसँग नदाँज्नु (साझेदार नबाउनु) र आमा-बुवासँग राम्रो व्यवहार गर्नु र दरिद्राताको भयले आफ्नो सन्तानहरूलाई नमार्नु । (किनभने) तिमीलाई र उनलाई हामीले नै जीविका प्रदान गर्दछौं, र हरेक प्रकारको निर्लज्ज कुराको नजिक नजानु, खुल्ला रूपमा होस् वा गोप्य रूपमा । र जुन प्राणीको ज्यान मार्न अल्लाहले रोक लगाएको छ, उसको ज्यान नलिनु । तर यस नियमको पालनमा हक-इन्साफको निम्ति गरिएका बाहेक । यी कुराहरूको पालनको लागि अल्लाहले तिमीलाई सचेत गरेको छ, कि तिमी सम्झ ।

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۖ وَأَوْفُوا الْكَيْلَ وَالْمِيزَانَ بِالْقِسْطِ ۖ لَا نُكَلِّفُ نَفْسًا إِلَّا وُسْعَهَا ۖ وَإِذَا قُلْتُمْ فَاعْدِلُوا وَلَوْ كَانَ ذَا قُرْبَىٰ ۖ وَبِعَهْدِ اللَّهِ أَوْفُوا ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿١٥٢﴾

१५२) र अनाथको सम्पत्तिको समीप पनि नजानु, तर यस्तो तरिकाले जुन कि तिनीहरूको हितमा होस्, तिनीहरू साबालक नहुन्जेलसम्म, र नाप-तौलको काम न्यायपूर्ण तरिकाले गर्ने गर । हामी हरेक व्यक्तिमा उत्तरदायित्वको भारी त्यति नै राख्दछौं जति कि उसको सामर्थ्य छ । र जब तिमी कुरा

गर्छौ न्यायको गर, चाहे त्यो विषय तिम्रा नातेदार आफन्तीको नै किन नहोस् र अल्लाहसँग गरेको वाचा पूरा गर यी कुराहरूको लागी अल्लाहले तिमीलाई विशेष आदेश दिएको छ कि सदैव तिमीले सम्फी राख ।

१५३) र आदेश यो छ कि यो धर्म मेरो सोभ्फो बाटो हो, तिमी यसैमा हिंड्नु र अन्य मार्गमा न हिंड्नु किनभने त्यसमा हिंडे अल्लाहको मार्गबाट विचलित भैहाल्नेछौं । यसको विशेष आदेश तिमीलाई अल्लाहले दिएको छ जसबाट तिमी आत्म संयमी बन्नसक ।

وَأَنَّ هَٰذَا صِرَاطِي مُسْتَقِيمًا فَاتَّبِعُوهُ ۖ وَلَا تَتَّبِعُوا السُّبُلَ فَتَفَرَّقَ بِكُمْ عَن سَبِيلِهِ ۚ ذَٰلِكُمْ وَصَّاكُم بِهِ لَعَلَّكُمْ تَتَّقُونَ ﴿١٥٣﴾

१५४) फेरि हामीले मुसा (अलै.) लाई यस्तो किताब प्रदान गरेका थियौं । जसले राम्रोकाम गर्ने मानिसहरूका लागि पुरा उपहार होस्, र सम्पूर्ण वस्तुहरूबारे आवश्यक निर्देशन होस् र सही मार्गको सूचना र दयालुताको वर्णन गरिएको होस् । जसको कारण उनका अनुयायीहरूले आफ्नो पालन-कर्तासंगको साक्षात्कारमा विश्वास गरुन् ।

ثُمَّ آتَيْنَا مُوسَى الْكِتَابَ تَمَامًا عَلَى الَّذِي أَحْسَنَ وَتَفْصِيلًا لِّكُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً لَّعَلَّهُم بِلِقَاءِ رَبِّهِمْ يُؤْمِنُونَ ﴿١٥٤﴾

१५५) र यो किताब (कुरआन) हामीले उतारेका हौं, भलाई र वरदानको रूपमा तसर्थ यसको अनुशरण गर र डर मान जसबाट तिमीमाथि दया गरियोस् ।

وَهَٰذَا كِتَابٌ أَنزَلْنَاهُ مُبَارَكٌ فَاتَّبِعُوهُ وَاتَّقُوا لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٥٥﴾

أَنْ تَقُولُوٓا إِنَّمَآ أُنْزِلَ الْكِتٰبُ عَلٰى طَآئِفَتَيْنِ مِنْ قَبْلِنَا ۖ وَإِنْ كُنَّا عَنْ دِرَاسَتِهِمْ لَغٰفِلِيْنَ ﴿١٥٦﴾

१५६) तिमीले यसो नभनः कि हामीभन्दा पहिला दुईवटा समूहलाई मात्र किताब उतारिएको हो र हामी यसको पाठनबाट अनभिज्ञ थियौं ।

أَوْ تَقُولُوا لَوْ أَنَّآ أُنْزِلَ عَلَيْنَا الْكِتٰبُ لَكُنَّآ أَهْدٰى مِنْهُمْ ۚ فَقَدْ جَآءَكُمْ بَيِّنَةٌ مِّنْ رَّبِّكُمْ وَهُدًى وَّرَحْمَةٌ ۚ فَمَنْ أَظْلَمُ مِمَّنْ كَذَّبَ بِاٰيٰتِ اللّٰهِ وَصَدَفَ عَنْهَا ۗ سَنَجْزِي الَّذِيْنَ يَصْدِفُوْنَ عَنْ اٰيٰتِنَا سُوٓءَ الْعَذَابِ بِمَا كَانُوْا يَصْدِفُوْنَ ﴿١٥٧﴾

१५७) वा यो नभन कि यदि हामी माथि पनि किताब उतारिएको भए हामी तिनीहरूको दाँजो अझ सही बाटोमा हुने थियौं । तसर्थ तिम्रो समीपमा तिम्रो पालनकर्ताको तर्फबाट स्पष्ट, मार्गदर्शनको माध्यम र वरदान आइसकेको छ । अब यो भन्दा ठूलो अत्याचारी को होला, जसले अल्लाहको आयतहरूलाई गलत भन्दछ र त्यसबाट अरुलाई विमुख गर्दछ । जसले हाम्रो आयतहरूबाट विमुख गर्दैछन् (त्यस विमुखताको कारण) छिटै हामीले तिनलाई कडाभन्दा कडा सजाय दिनेनै छौं ।

هَلْ يَنْظُرُوْنَ إِلَّآ أَنْ تَأْتِيَهُمُ الْمَلٰٓئِكَةُ أَوْ يَأْتِيَ رَبُّكَ أَوْ يَأْتِيَ بَعْضُ اٰيٰتِ رَبِّكَ ۗ يَوْمَ يَأْتِيْ بَعْضُ اٰيٰتِ رَبِّكَ لَا يَنْفَعُ نَفْسًا إِيْمَانُهَا لَمْ تَكُنْ اٰمَنَتْ مِنْ قَبْلُ أَوْ كَسَبَتْ فِيْٓ إِيْمَانِهَا خَيْرًا ۗ قُلِ انْتَظِرُوٓا إِنَّا مُنْتَظِرُوْنَ ﴿١٥٨﴾

१५८) के यिनीहरू यस कुराको मात्र प्रतिक्षा गरिराखेका छन् कि, तिनीहरू छेउ स्वर्गदूतहरू (फरिश्ता) आऊन् वा स्वयम् तिम्रो पालनकर्ता नै आऊन्, वा तिम्रो पालनकर्ताको कुनै ठूलो निशानी आओस् ? जुन दिन तिम्रो पालनकर्ताबाट कुनै विशिष्ट निशानी आउनेछ (त्यतीखेर) जसले पहिला देखि आस्था राख्दैन उसको लागि कुनै फाइदा हुने छैन, वा उसले आफ्नो ईमानको अवस्थामा कुनै असल कर्म गरेकै छैन । हे

पैगम्बर ! तिनीहरूसित भनिदिनुस् कि तिमीहरूले प्रतिक्षा गर, हामीले पनि प्रतिक्षा गर्दछौं ।

إِنَّ الَّذِينَ فَرَّقُوا دِينَهُمْ وَكَانُوا شِيَعًا لَّسْتَ مِنْهُمْ فِي شَيْءٍ ۚ إِنَّمَا أَمْرُهُمْ إِلَى اللَّهِ ثُمَّ يُنَبِّئُهُم بِمَا كَانُوا يَفْعَلُونَ ﴿١٥٩﴾

१५९) निःसन्देह जुन मानिसहरूले आफ्नो धर्मलाई धेरै भागमा विभाजित गरे र स्वयं समूहमा विखण्डित भए, तिनीहरूसित तपाइको कुनै सम्बन्ध छैन । तिनीहरूको हिसाब किताब अल्लाहको जिम्मामा छ । उसैले तिनीहरूलाई बताई दिने छ, के कति तिनीहरूले गरेका छन् ।''

مَن جَاءَ بِالْحَسَنَةِ فَلَهُ عَشْرُ أَمْثَالِهَا ۖ وَمَن جَاءَ بِالسَّيِّئَةِ فَلَا يُجْزَىٰ إِلَّا مِثْلَهَا وَهُمْ لَا يُظْلَمُونَ ﴿١٦٠﴾

१६०) जसले सत्कर्म गर्दछ उसले त्यसको दश गुणा प्रतिफल पाउनेछ र जसले दुष्कर्म गर्दछ उसले त्यतिनै सजाय पाउनेछ, जति उसले अपराध गरेको छ । र तिनीहरूमाथि कुनै अन्याय गरिने छैन ।

قُلْ إِنَّنِي هَدَانِي رَبِّي إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ دِينًا قِيَمًا مِّلَّةَ إِبْرَاهِيمَ حَنِيفًا ۚ وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿١٦١﴾

१६१) भनिदिनुस् कि मलाई मेरो पालनकर्ताले सोझो बाटो देखाई सकेको छ, त्यो एउटा सम्पूर्ण धर्म हो जुन बाटो हो इब्राहीम(अलै)को जो मात्र अल्लाहको उपासक थिए र उनी मुश्रिकहरूमध्येका थिएनन् ।''

قُلْ إِنَّ صَلَاتِي وَنُسُكِي وَمَحْيَايَ وَمَمَاتِي لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿١٦٢﴾

१६२) यो पनि भनिदिनुस् कि मेरो नमाज, र मेरो सबै इबादत (उपासना) निश्चित रूपले र मेरो जीवन र मृत्यु सबै अल्लाह कै लागि हुन्, जो सम्पूर्ण ब्रह्माण्डको स्वामी हो ।

لَا شَرِيكَ لَهُۥ ۖ وَبِذَٰلِكَ أُمِرْتُ وَأَنَا۠ أَوَّلُ ٱلْمُسْلِمِينَ ﴿١٦٣﴾

१६३) उसको कुनै साझेदार छैन। र मलाई यही कुराको आदेश भएको छ र म आज्ञापालकहरू मध्ये पहिलो हूँ।

قُلْ أَغَيْرَ ٱللَّهِ أَبْغِى رَبًّا وَهُوَ رَبُّ كُلِّ شَىْءٍ ۚ وَلَا تَكْسِبُ كُلُّ نَفْسٍ إِلَّا عَلَيْهَا ۚ وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ۚ ثُمَّ إِلَىٰ رَبِّكُم مَّرْجِعُكُمْ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿١٦٤﴾

१६४) तपाई भन्नुस् कि के म अल्लाह बाहेक अरु पालनकर्ता खोजूँ ? जब कि उही प्रत्येक कुराको मालिक हो। र जसले जे कर्म गर्दछ, त्यसको हानि नोक्सानी त्यसैलाई नै हुन्छ। र कसैले कसैको पापको भारी बोक्ने छैन, अनि तिमी सबैलाई आफ्ना पालनकर्ता छेउ नै फर्केर जानुपर्ने छ। अनि उसले तिमीहरूले उठाएकै प्रत्येक विवादको बारेमा तिमीहरू सामु खुलस्त पार्ने छ।

وَهُوَ ٱلَّذِى جَعَلَكُمْ خَلَٰٓئِفَ ٱلْأَرْضِ وَرَفَعَ بَعْضَكُمْ فَوْقَ بَعْضٍ دَرَجَٰتٍ لِّيَبْلُوَكُمْ فِى مَآ ءَاتَىٰكُمْ ۗ إِنَّ رَبَّكَ سَرِيعُ ٱلْعِقَابِ وَإِنَّهُۥ لَغَفُورٌ رَّحِيمٌۢ ﴿١٦٥﴾

१६५) र उही यस्तो हो जसले तिमीलाई पृथ्वीको उत्तराधिकारी (नायक) बनायो र एकलाई अर्को माथि उच्च ओहदा प्रदान गर्‍यो, जसबाट जे-जति उसले तिमीलाई प्रदान गरेको छ, त्यसमा तिम्रो परीक्षा गरोस्। निःसन्देह तिम्रो रबले छिटै सजाय दिनेवाला छ। र ठूलो क्षमादाता र दयावान पनि छ।



# सूरतुल् आराफ-७



सूरतुल् आराफ मक्की हो र यसमा २०६ आयतहरू र २४ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट, जो बडो कृपालु, अत्यन्त दयावान छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ्-लाम-मीम-साद ।

الٓمّٓصٓ ﴿١﴾

२) (हे मोहम्मद !) यो एउटा किताब हो, जुन तपाईमाथि उतारिएको छ, (उद्देश्य यो हो कि) यसबाट डर देखाउने गर्नुस, अतः तपाईको हृदयमा संक्रीर्णता नहोस् र यो ईमान ल्याएकाहरूको लागि उपदेश हो ।

كِتٰبٌ اُنْزِلَ اِلَيْكَ فَلَا يَكُنْ فِيْ صَدْرِكَ حَرَجٌ مِّنْهُ لِتُنْذِرَ بِهٖ وَذِكْرٰى لِلْمُؤْمِنِيْنَ ﴿٢﴾

३) (मानिसहरू !) जुन किताब तिमीमाथि तिम्रो पालनकर्ताबाट उतारिएको छ त्यसको अनुशरण गर र आफ्नो रबलाई छोडेर अरु मनगढ़न्ते अगुवाहरूको अनुशरण नगर । अतः तिमीहरू एकदमथोरै उपदेश स्वीकार गर्दछौ ।

اِتَّبِعُوْا مَآ اُنْزِلَ اِلَيْكُمْ مِّنْ رَّبِّكُمْ وَلَا تَتَّبِعُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَآءَ ؕ قَلِيْلًا مَّا تَذَكَّرُوْنَ ﴿٣﴾

४) र धेरै बस्तीहरूलाई हामीले नष्ट गरिदिएका छौं, जसमाथि हाम्रो सजाय (अचानक) रातीको बेला आयो वा दिनमा जुनबेला तिनीहरू दिउँसोको विश्राम गर्दथे ।

وَكَمْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا فَجَآءَهَا بَاْسُنَا بَيَاتًا اَوْ هُمْ قَآئِلُوْنَ ﴿٤﴾

५) जुन बेला उनीहरूमाथि हाम्रो सजाय आउँदथ्यो, तिनीहरूको मुखबाट यही नै निष्कियो अफसोच ! हामी अत्याचारी थियौं ।

فَمَا كَانَ دَعْوٰىهُمْ اِذْ جَآءَهُمْ بَاْسُنَآ اِلَّآ اَنْ قَالُوْٓا اِنَّا كُنَّا ظٰلِمِيْنَ ﴿٥﴾

६) अतः हामीले तिनीहरूबाट सोधपूछ गर्नेछौं जो तिर हामीले पैगम्बर पठाएका थियौं, र पैगम्बरलाई पनि सोध्छौं ।

فَلَنَسْـَٔلَنَّ الَّذِيْنَ اُرْسِلَ اِلَيْهِمْ وَلَنَسْـَٔلَنَّ الْمُرْسَلِيْنَ ﴿٦﴾

७) फेरि हामीसंग पूर्ण ज्ञानभएकोले (तिनका सम्पूर्ण वृतान्त)उनको सामु वर्णन गर्ने छौं र हामी कहिले पनि अज्ञान थिएनौं ।

فَلَنَقُصَّنَّ عَلَيْهِمْ بِعِلْمٍ وَّمَا كُنَّا غَآئِبِيْنَ ﴿٧﴾

८) र त्यसदिनको कर्मको तराजु साँचो हुनेछ । तसर्थ जुन मानिसहरूका कर्मको तुला ग्रहुङ्गो हुनेछ, ती नै मुक्ति प्राप्त गर्नेवाला हुनेछन् ।

وَالْوَزْنُ يَوْمَئِذِ ﹰالْحَقُّ ۚ فَمَنْ ثَقُلَتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٨﴾

९) र जुन मानिसको तुला(कर्मका) हलुङ्गो हुनेछ ती मानिसहरू हुन् जसले कि, आफूलाई घाटामा पारे, किनभने हाम्रो आयतहरूबारे अन्याय गर्दथे ।

وَمَنْ خَفَّتْ مَوَازِيْنُهٗ فَاُولٰٓئِكَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ بِمَا كَانُوْا بِاٰيٰتِنَا يَظْلِمُوْنَ ﴿٩﴾

१०) र हामीले नै पृथ्वीमा तिम्रो बासस्थान बनायौं र यसबाट तिम्रो निम्ति जीविकाका साधानहरू सृजना गऱ्यौं (तर) तिमीले कमै आभार व्यक्त गर्दछौ ।

وَلَقَدْ مَكَّنّٰكُمْ فِى الْاَرْضِ وَجَعَلْنَا لَكُمْ فِيْهَا مَعَايِشَ ۗ قَلِيْلًا مَّا تَشْكُرُوْنَ ﴿١٠﴾

११) र हामीले तिमीलाई सृष्टि गऱ्यौं, अनि तिम्रो रूप आकार बनायौं तर त्यसपछि फरिश्ताहरूलाई आदेश गऱ्यौं कि आदमको अगाडि ढोग, र सबैले ढोगे, तर इब्लीस (शैतानहरूका नायक) ढोग्नेहरूमा शामिल भएन ।

وَلَقَدْ خَلَقْنٰكُمْ ثُمَّ صَوَّرْنٰكُمْ ثُمَّ قُلْنَا لِلْمَلٰٓئِكَةِ اسْجُدُوْا لِاٰدَمَ ۖ فَسَجَدُوْٓا اِلَّآ اِبْلِيْسَ ۗ لَمْ يَكُنْ مِّنَ السّٰجِدِيْنَ ﴿١١﴾

قَالَ مَا مَنَعَكَ اَلَّا تَسْجُدَ اِذْ اَمَرْتُكَ ؕ قَالَ اَنَا خَيْرٌ مِّنْهُ ۚ خَلَقْتَنِيْ مِنْ نَّارٍ وَّخَلَقْتَهٗ مِنْ طِيْنٍ ﴿١٢﴾

१२) अल्लाहले भन्यो ''तिमी हौ जस्लेढोगेनौ तिमीलाई यसबाट कुन कुराले रोक्यो जब कि मैले तिमीलाई आदेश गरें?'' उसले भन्यो: कि, ''म त्यसभन्दा श्रेष्ठ छु । मलाई तपाईले आगोबाट सृष्टि गर्नु भएको हो र उसलाई माटोबाट ।''

قَالَ فَاهْبِطْ مِنْهَا فَمَا يَكُوْنُ لَكَ اَنْ تَتَكَبَّرَ فِيْهَا فَاخْرُجْ اِنَّكَ مِنَ الصّٰغِرِيْنَ ﴿١٣﴾

१३) अल्लाहले आदेश गर्‍यो तँ आकाश बाट तल झरिहाल तँलाई उचित छैन कि यहाँ घमण्ड गर तसर्थ गई हाल । तँ ती व्यक्तीहरूमध्येको होस् जसले स्वयं आफ्नो अपमान चाहन्छ ।

قَالَ اَنْظِرْنِيْۤ اِلٰى يَوْمِ يُبْعَثُوْنَ ﴿١٤﴾

१४) उसले भन्यो कि, मलाई कयामत (प्रलय)को दिनसम्म छूट प्रदान गरिदिनुस्,

قَالَ اِنَّكَ مِنَ الْمُنْظَرِيْنَ ﴿١٥﴾

१५) अल्लाहले भन्यो ठीक छ, ''तँलाई छूट प्रदान गरिन्छ ।''

قَالَ فَبِمَاۤ اَغْوَيْتَنِيْ لَاَقْعُدَنَّ لَهُمْ صِرَاطَكَ الْمُسْتَقِيْمَ ﴿١٦﴾

१६) अनि शैतानले भन्यो कि जस प्रकार तपाईले मलाई तिरस्कृत गर्नुभयो म शपथलिन्छु कि तिम्रो सोझो बाटोबाट उनीहरूलाई मार्ग विचलित गर्नको लागि घातलगाई बसिराख्ने छु ।

ثُمَّ لَاٰتِيَنَّهُمْ مِّنْۢ بَيْنِ اَيْدِيْهِمْ وَمِنْ خَلْفِهِمْ وَعَنْ اَيْمَانِهِمْ وَعَنْ شَمَآئِلِهِمْ ؕ وَلَا تَجِدُ اَكْثَرَهُمْ شٰكِرِيْنَ ﴿١٧﴾

१७) अनि तिनका अगाडि र पछाडि र दायाँ र बायाँ चारैतिरबाट उनीहरूमाथी आक्रमण गर्ने छु । र तिमीले तिनीहरूमध्ये धेरैलाई कृतज्ञ पाउँने छैनौं ।

قَالَ اخْرُجْ مِنْهَا مَذْءُومًا مَّدْحُورًا ۖ لَّمَن تَبِعَكَ مِنْهُمْ لَأَمْلَأَنَّ جَهَنَّمَ مِنكُمْ أَجْمَعِينَ ﴿١٨﴾

१८) अल्लाहले आदेश गऱ्यो, "निक्ली हाल" यहाँबाट, घृणित र अपमानित भएर । निःसन्देह तिनीहरूमध्ये जुन मानिसहरूले तेरो भनाई मान्ने छन् मैले तँलाई र तिनीहरूलाई नर्कमा हालेर नर्कलाई नै भरिदिनेछु ।"

وَيَا آدَمُ اسْكُنْ أَنتَ وَزَوْجُكَ الْجَنَّةَ فَكُلَا مِنْ حَيْثُ شِئْتُمَا وَلَا تَقْرَبَا هَٰذِهِ الشَّجَرَةَ فَتَكُونَا مِنَ الظَّالِمِينَ ﴿١٩﴾

१९) र हामीले आदेश दियौंकि हे आदम तिमी र तिम्रो श्रीमती दुबै यस वहिश्त (स्वर्ग) मा बसोबास गर जहाँ तिमीहरूलाई जुन कुरा खान मन पर्छ खाऊ तर त्यस रुख छेउ नजानु अन्यथा अन्यायी भइहाल्नेछौ ।

فَوَسْوَسَ لَهُمَا الشَّيْطَانُ لِيُبْدِيَ لَهُمَا مَا وُورِيَ عَنْهُمَا مِن سَوْآتِهِمَا وَقَالَ مَا نَهَاكُمَا رَبُّكُمَا عَنْ هَٰذِهِ الشَّجَرَةِ إِلَّا أَن تَكُونَا مَلَكَيْنِ أَوْ تَكُونَا مِنَ الْخَالِدِينَ ﴿٢٠﴾

२०) त्यसपछि शैतानले ती दुवैको मनमा कौतुहलको सृजन गरिदियो जसबाट तिनीहरूको गुप्ताङ्गहरू जुन एकअर्कासंग लुकाइएको थियो, तिनीहरूको अगाडि खोलिदेओस् । उसले भन्न थाल्यो कि, तिमीहरूलाई तिम्रो पालनकर्ताले यस रुखबाट मात्र यस कारणले रोकेको छ कि तिमी दुवै फरिश्ता (स्वर्गदूत) नबनी हाल वा तिमीहरूलाई शाश्वत अमरत्व प्राप्त भएर नजाओस् ।

وَقَاسَمَهُمَا إِنِّي لَكُمَا لَمِنَ النَّاصِحِينَ ﴿٢١﴾

२१) तिनीहरूको समक्ष (शैतानले) शपथ खाएर भन्यो कि म तिम्रो हितैसी हूँ ।

فَدَلَّاهُمَا بِغُرُورٍ ۚ فَلَمَّا ذَاقَا الشَّجَرَةَ بَدَتْ لَهُمَا سَوْآتُهُمَا وَطَفِقَا يَخْصِفَانِ عَلَيْهِمَا مِن وَرَقِ الْجَنَّةِ ۖ وَنَادَاهُمَا رَبُّهُمَا أَلَمْ أَنْهَكُمَا عَن تِلْكُمَا الشَّجَرَةِ وَأَقُل لَّكُمَا إِنَّ الشَّيْطَانَ لَكُمَا عَدُوٌّ مُّبِينٌ ﴿٢٢﴾

२२) यस प्रकार धोखा दिएर उसले ती दुवैलाई विस्तारै आफ्नो पापतिर आकृष्ट गरिहाल्यो । जब तिनीहरू दुवैले त्यस रुखको फलको स्वाद

चाखे तब तिनीहरूका गुप्ताङ्गहरू एक अर्का अगाडि प्रकट भैहाले । र तिनीहरूले स्वर्गको पातबाट आफ्नो शरीर ढाँक्न थाले । त्यसपछि तिनका पालनकर्ताले तिनीहरूलाई सम्बोधन गर्दै भने कि, के मैले तिमीहरूलाई यस वृक्षबाट रोक लगाएको थिएन ? र भनेको थिएन कि, शैतान तिम्रो खुल्ला रूपमा शत्रु हो ?

२३) दुवैले भन्न थाले कि, "हे हाम्रो रब हामीले आफ्नो लागी ठूलो नोक्सान गर्‍यौं, अब यदि तिमीले हामीलाई क्षमा गर्दैनौ र दया गर्दैनौ भने निश्चिय नै हामी घाटा पाउने मध्येका भैहाल्छौं ।

قَالَا رَبَّنَا ظَلَمْنَا أَنفُسَنَا وَإِن لَّمْ تَغْفِرْ لَنَا وَتَرْحَمْنَا لَنَكُونَنَّ مِنَ الْخَاسِرِينَ ﴿٢٣﴾

२४) अल्लाहले आदेश गर्नुभयो, "तिमी सबै स्वर्गबाट तल झरिहाल । तिमीहरू एक अर्काको शत्रु भयौ र तिम्रो लागि एक निश्चित समयको लागि पृथ्वीमा बास र जीवनको लागि सामग्रीको व्यवस्था गरिएको छ ।"

قَالَ اهْبِطُوا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ ۖ وَلَكُمْ فِي الْأَرْضِ مُسْتَقَرٌّ وَمَتَاعٌ إِلَىٰ حِينٍ ﴿٢٤﴾

२५) अरु आदेश भयो कि, "तिमीले त्यहीं जिन्दगी गुजार्नु र मर्नु पर्नेछ र त्यसैबाट पुनः (जीवित गराई) निकालिने छौ ।

قَالَ فِيهَا تَحْيَوْنَ وَفِيهَا تَمُوتُونَ وَمِنْهَا تُخْرَجُونَ ﴿٢٥﴾

२६) हे आदमका सन्तान ! हामीले तिम्रोलागी पोशाक बनायौं जसबाट तिम्रो गुप्ताङ्गहरू ढाकियोस् र तिम्रो शरिरको रक्षा र शोभा पनि होस् ।

يَا بَنِي آدَمَ قَدْ أَنزَلْنَا عَلَيْكُمْ لِبَاسًا يُوَارِي سَوْآتِكُمْ وَرِيشًا ۖ وَلِبَاسُ التَّقْوَىٰ ذَٰلِكَ خَيْرٌ ۚ ذَٰلِكَ مِنْ آيَاتِ اللَّهِ لَعَلَّهُمْ يَذَّكَّرُونَ ﴿٢٦﴾

उत्तम पोशाक सत्यनिष्ठता नै हो । यो अल्लाहका निशानीहरूमध्ये एक हो । ताकि यसबाट मानिसहरूले याद गरुन् ।

२७) हे आदमका सन्तति ! यस्तो नहोस् कि शैतान तिमीलाई फकाएर कुनै नोक्सानीमा पारोस् जस्तो कि तिम्रो आमा बुवालाई फकाएर स्वर्गबाट निष्कासित गराई हाल्यो र तिनीहरूलाई बस्त्रहीन गरायो कि तिनका गुप्ताङ्ग एक आर्कालाई देखाइदेओस् । त्यसले र त्यसको समूहले तिमीलाई यस्तो ठाउँबाट हेरिराख्दछन् कि तिमीले देख्न सक्दैनौ । हामीले यी शैतानहरूलाई तिनका मित्र बनाई दिएका छौं जसले ईमान ल्याउँदैनन् ।

يَٰبَنِيٓ ءَادَمَ لَا يَفۡتِنَنَّكُمُ ٱلشَّيۡطَٰنُ كَمَآ أَخۡرَجَ أَبَوَيۡكُم
مِّنَ ٱلۡجَنَّةِ يَنزِعُ عَنۡهُمَا لِبَاسَهُمَا لِيُرِيَهُمَا سَوۡءَٰتِهِمَآۚ إِنَّهُۥ
يَرَىٰكُمۡ هُوَ وَقَبِيلُهُۥ مِنۡ حَيۡثُ لَا تَرَوۡنَهُمۡۗ إِنَّا جَعَلۡنَا
ٱلشَّيَٰطِينَ أَوۡلِيَآءَ لِلَّذِينَ لَا يُؤۡمِنُونَ ﴿٢٧﴾

२८) र जब यिनीहरूले कुनै निर्लज्जतापूर्ण अश्लील काम गर्दछन् तब भन्दछन् कि, हामीले आफ्ना बाबु-बाजेलाई यस्तै गरेको देखेका छौं र अल्लाहले पनि हामीलाई यही आदेश गरेको छ । भनिदिनुस् कि, अल्लाह निर्लज्जताको आदेश कहिले पनि दिंदैन । तिमीले अल्लाहको बारेमा यस्ता कुरा किन गर्दछौ जसको विषयमा कुनै ज्ञान छैन ?

وَإِذَا فَعَلُواْ فَٰحِشَةً قَالُواْ وَجَدۡنَا عَلَيۡهَآ ءَابَآءَنَا وَٱللَّهُ
أَمَرَنَا بِهَاۗ قُلۡ إِنَّ ٱللَّهَ لَا يَأۡمُرُ بِٱلۡفَحۡشَآءِۖ أَتَقُولُونَ
عَلَى ٱللَّهِ مَا لَا تَعۡلَمُونَ ﴿٢٨﴾

२९) भनिदिनुस् "कि, मेरो पालनकर्ताले न्यायको आदेश दिएको छ, र यो पनि कि प्रत्येक नमाजको बेला

قُلۡ أَمَرَ رَبِّي بِٱلۡقِسۡطِۖ وَأَقِيمُواْ وُجُوهَكُمۡ عِندَ
كُلِّ مَسۡجِدٖ وَٱدۡعُوهُ مُخۡلِصِينَ لَهُ ٱلدِّينَۚ
كَمَا بَدَأَكُمۡ تَعُودُونَ ﴿٢٩﴾

आफ्नो अनुहार सिधा (किब्ला तीर) राख्नेगर र अल्लाहको उपासना उसैको लागि मात्र गर्नु । अल्लाहले जुन प्रकारले तिमीलाई शुरूमा सृष्टि गरेको थियो त्यस्तै फेरि तिमी सृजना गरिनेछौ ।''

३०) केही समूहलाई त उसले सही मार्ग देखायो र केहीमाथि पथविचलित भएको प्रमाणित भैसक्यो । (किनकि) यिनीहरूले अल्लाहलाई छाडि शैतानलाई आफ्नो मित्र बनाए । र यो संम्भन्छन् कि तिनीहरू सही मार्गमा छन् ।

فَرِيقًا هَدَىٰ وَفَرِيقًا حَقَّ عَلَيْهِمُ الضَّلَٰلَةُ ۗ إِنَّهُمُ اتَّخَذُوا الشَّيَٰطِينَ أَوْلِيَآءَ مِن دُونِ اللَّهِ وَيَحْسَبُونَ أَنَّهُم مُّهْتَدُونَ ﴿٣٠﴾

३१) हे आदमको सन्तति प्रत्येक नमाजको बेला तिमीहरू राम्रो सँग लुगा लगाउने गर, र प्रयाप्त खाने पिउने गर तर सीमाभन्दा अघि नबढ । निःसन्देह अल्लाह सीमाभन्दा अघि बढ्नेलाई मन पराउँदैन ।

يَٰبَنِىٓ ءَادَمَ خُذُوا زِينَتَكُمْ عِندَ كُلِّ مَسْجِدٍ وَكُلُوا وَاشْرَبُوا وَلَا تُسْرِفُوٓا ۚ إِنَّهُۥ لَا يُحِبُّ الْمُسْرِفِينَ ﴿٣١﴾

३२) तपाई भन्नुस् कि आभूषण र खाने पिउने पवित्र कुराहरू जुन अल्लाहले आफ्नो उपासकहरूका लागि बनाएको छ, तिनलाई त्याज्य कसले बनाएको छ ? भनिदिनुस्, यी कुराहरू सांसारिक जीवनमा पनि ईमान भएकाहरूका निम्ति हुन् र कियामतका दिन विशेष रूपले तिनैको भागमा हुनेछन् । यस प्रकार अल्लाहले उसका आयतहरू बुझ्नेहरूलाई स्पष्ट रूपले वर्णन गर्दछ ।

قُلْ مَنْ حَرَّمَ زِينَةَ اللَّهِ الَّتِىٓ أَخْرَجَ لِعِبَادِهِۦ وَالطَّيِّبَٰتِ مِنَ الرِّزْقِ ۚ قُلْ هِىَ لِلَّذِينَ ءَامَنُوا فِى الْحَيَوٰةِ الدُّنْيَا خَالِصَةً يَوْمَ الْقِيَٰمَةِ ۗ كَذَٰلِكَ نُفَصِّلُ الْءَايَٰتِ لِقَوْمٍ يَعْلَمُونَ ﴿٣٢﴾

३३) भनिदिनुस् कि बरु मेरो पालनकर्ताले त निर्लज्जताका कुराहरू चाहे ती खुला रूपमा हुन् वा गोप्य, र प्रत्येक पापलाई र अकारण कसैमाथि अत्याचार गर्ने कुरालाई त्याज्य बनाएको छ । र कसैलाई अल्लाहको साझेदार ठान्ने कुरा, जसको निम्ति उसले कुनै प्रमाण प्रदान गरेको छैन र अल्लाहको बारेमा तिमीलाई कुनै ज्ञान नभएको कुरा गर्न पनि त्याज्य छ ।

قُلْ إِنَّمَا حَرَّمَ رَبِّيَ الْفَوَاحِشَ مَا ظَهَرَ مِنْهَا وَمَا بَطَنَ وَالْإِثْمَ وَالْبَغْيَ بِغَيْرِ الْحَقِّ وَأَنْ تُشْرِكُوا بِاللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا وَأَنْ تَقُولُوا عَلَى اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٣٣﴾

३४) प्रत्येक समुदायको लागि (मृत्युको) एक समय निर्धारित छ, त्यो समय आइपुगेपछि न त एकछिन ढिलो गर्न सक्दछन् र नत चाँडो ।

وَلِكُلِّ أُمَّةٍ أَجَلٌ فَإِذَا جَاءَ أَجَلُهُمْ لَا يَسْتَأْخِرُونَ سَاعَةً وَلَا يَسْتَقْدِمُونَ ﴿٣٤﴾

३५) हे आदमको सन्तति ! जब हाम्रा पैगम्बर तिमी छेउ तिमी मध्येका आउँदछन् र हाम्रा आयतहरू तिमीलाई सुनाउँदछन्, अनि जसले आत्म संयम राख्दछन र आफूलाई ठीक राख्दछन् त्यस्ता मानिसहरू-लाई न त केही भय हुनेछ न त तिनी दुःखी नै हुनेछन् ।

يَا بَنِي آدَمَ إِمَّا يَأْتِيَنَّكُمْ رُسُلٌ مِنْكُمْ يَقُصُّونَ عَلَيْكُمْ آيَاتِي فَمَنِ اتَّقَى وَأَصْلَحَ فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٣٥﴾

३६) र जसले हाम्रा यी आयतहरूलाई गलत, वा झूठ भनेका छन् र तिनीसित घमण्ड पूर्वक व्यवहार देखाउँछन् तिनीहरू नार्किय हुनेछन् र सधैं त्यसैमा बसिराख्नेछन् ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَاسْتَكْبَرُوا عَنْهَا أُولَٰئِكَ أَصْحَابُ النَّارِ هُمْ فِيهَا خَالِدُونَ ﴿٣٦﴾

३७) योभन्दा अन्यायी को होला जसले

فَمَنْ أَظْلَمُ مِمَّنِ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَوْ كَذَّبَ

بِاٰيٰتِهٖ ؕ اُولٰٓئِكَ يَنَالُهُمْ نَصِيْبُهُمْ مِّنَ الْكِتٰبِ ؕ حَتّٰٓى اِذَا جَآءَتْهُمْ رُسُلُنَا يَتَوَفَّوْنَهُمْ ۙ قَالُوْٓا اَيْنَ مَا كُنْتُمْ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ ؕ قَالُوْا ضَلُّوْا عَنَّا وَشَهِدُوْا عَلٰٓى اَنْفُسِهِمْ اَنَّهُمْ كَانُوْا كٰفِرِيْنَ ﴿۳۷﴾

अल्लाह माथि मिथ्या दोषरोपण गऱ्यो वा उसका आयतहरूलाई गलत भन्दछ । तिनीहरूले आफ्नो भाग्यले निर्धारित गरेको कुरा पाउनेछन् । यहाँसम्म कि जब तिनी छेउ हामीले पठाएका फरिश्ताहरू प्राण निकाल्न आउने छन् र भन्ने छन्: "कि, अल्लाह बाहेक जसलाई तिमीले पुकार्ने गर्दथ्यौ तिनीहरू अहिले कहाँ गए ? तिनीहरूले भन्ने छन्: (थाहा छैन) तिनीहरूले हामीलाई छोडेर गइहाले र तिनीहरूले आफुलाई काफिर भएको कुरा स्वीकार गर्नेछन् ।

قَالَ ادْخُلُوْا فِيْٓ اُمَمٍ قَدْ خَلَتْ مِنْ قَبْلِكُمْ مِّنَ الْجِنِّ وَالْاِنْسِ فِي النَّارِ ؕ كُلَّمَا دَخَلَتْ اُمَّةٌ لَّعَنَتْ اُخْتَهَا ؕ حَتّٰٓى اِذَا ادَّارَكُوْا فِيْهَا جَمِيْعًا ۙ قَالَتْ اُخْرٰىهُمْ لِاُوْلٰىهُمْ رَبَّنَا هٰٓؤُلَآءِ اَضَلُّوْنَا فَاٰتِهِمْ عَذَابًا ضِعْفًا مِّنَ النَّارِ ؕ قَالَ لِكُلٍّ ضِعْفٌ وَّلٰكِنْ لَّا تَعْلَمُوْنَ ﴿۳۸﴾

३८) अल्लाहको आदेश हुने छः कि, जिन्न र मानिसहरूको जो सामूह तिमीहरू भन्दा पहिले नै गुज्री सकेका छन् । तिनको साथमा तिमी पनि नर्कमा जाऊ । जब कुनै समूह त्यसमा प्रवेश गर्नेछ आफूभन्दा पहिलेको समूहलाई धिक्कारने छ । यहाँसम्म कि जब सबै त्यसमा एकत्रित भइसक्नेछन । त हरेक पछिल्लो समूहले पहिलो समूहको बारेमा भन्ने छन्: कि, हे रब ! यिनै मानिसहरूले हामीलाई पथभ्रष्ट गरेका थिए तसर्थ यिनलाई नर्कको सजाय दोब्बर दिनु । अल्लाहले भन्ने छः "कि, हरएकलाई दुई गुणा सजाय दिइने छ तर तिमीलाई थाहा छैन ?"

३९) पहिलो समुदायले पछिल्लो सित भन्ने छ कि, तिमीलाई हामीमाथि कुनै प्रधानता प्राप्त भएन जुन कर्म तिमीले गर्ने गर्दथ्यौ त्यसको प्रतिफल स्वरूप सजायको स्वाद चाख ।

وَقَالَتْ أُولَىٰهُمْ لِأُخْرَىٰهُمْ فَمَا كَانَ لَكُمْ عَلَيْنَا
مِنْ فَضْلٍ فَذُوقُوا الْعَذَابَ بِمَا كُنْتُمْ
تَكْسِبُونَ ﴿٣٩﴾

४०) जसले हाम्रो आयतहरूलाई झूठा भने र अभिमानपूर्ण व्यवहार गरे, तिनीहरूका लागि आकाशका ढोकाहरू खोलिने छैनन्, र तिनीहरू कहिले पनि स्वर्गमा जानेछैनन् जबसम्म कि, ऊँट सियोको प्वाँलबाट छिर्दैन । र पाप गर्नेहरूलाई हामीले यस्तै सजाय दिने गर्छौं ।

إِنَّ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَاسْتَكْبَرُوا عَنْهَا لَا
تُفَتَّحُ لَهُمْ أَبْوَابُ السَّمَاءِ وَلَا يَدْخُلُونَ الْجَنَّةَ
حَتَّىٰ يَلِجَ الْجَمَلُ فِي سَمِّ الْخِيَاطِ ۚ وَكَذَٰلِكَ نَجْزِي
الْمُجْرِمِينَ ﴿٤٠﴾

४१) यस्ता मानिसहरूका लागि नर्कको आगो बिछ्यौना (ओछ्यान) हुनेछ र माथिबाट त्यसैको ओढने पनि । र यस्ता अत्याचारीहरूलाई हामीले यस्तै सजाय दिने गर्छौं ।

لَهُمْ مِنْ جَهَنَّمَ مِهَادٌ وَمِنْ فَوْقِهِمْ غَوَاشٍ ۚ وَكَذَٰلِكَ
نَجْزِي الظَّالِمِينَ ﴿٤١﴾

४२) जुन मानिसहरूले हाम्रो आयतहरूमाथि आस्था राखे र सत्कर्म गरेका छन् त्यस विषयमा हामीले कुनै व्यक्तिलाई उसको क्षमता भन्दा बढी जिम्मेवारी दिने छैनौं । यस्ता मानिसहरू नै स्वर्गका निबासी हुन् । जो सधैं त्यसमा बास गर्नेछन् ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَا نُكَلِّفُ نَفْسًا
إِلَّا وُسْعَهَا أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا
خَالِدُونَ ﴿٤٢﴾

४३) र एक अर्काका लागि छलकपट जो तिनीहरूका छातिमा थियो हामीले सबै निकाली दिनेछौं । तिनीहरूको (महलहरू) मुनि नहरहरू बगिराखेका

وَنَزَعْنَا مَا فِي صُدُورِهِمْ مِنْ غِلٍّ تَجْرِي مِنْ
تَحْتِهِمُ الْأَنْهَارُ ۖ وَقَالُوا الْحَمْدُ لِلَّهِ الَّذِي هَدَانَا
لِهَٰذَا وَمَا كُنَّا لِنَهْتَدِيَ لَوْلَا أَنْ هَدَانَا اللَّهُ ۖ لَقَدْ
جَاءَتْ رُسُلُ رَبِّنَا بِالْحَقِّ ۖ وَنُودُوا أَنْ تِلْكُمُ الْجَنَّةُ

أُورِثْتُمُوهَا بِمَا كُنْتُمْ تَعْمَلُونَ ﴿٤٣﴾

हुनेछन् । र उनीहरूले भन्ने छन् "कि, अल्लाहको हामी धेरै कृतज्ञ छौं जसले हामीलाई यस स्थान सम्म पुऱ्यायो, र यदि अल्लाहले हामीलाई बाटो नदेखाएको भए हामी स्वयंले बाटो पाउन सक्ने थिएनौं । वास्तवमै हाम्रा पालनकर्ताले पठाएका रसूलले साँचो कुरा लिएर आएका थिए । उनी सित ठूलो आवाजमा भनिनेछ कि, यो जन्नत हो जसको तिमी वारिस बनाईएका छौ । यो तिमीले तिम्रो कर्मको बदलामा पाएका हौ ।"

وَنَادَىٰ أَصْحَابُ الْجَنَّةِ أَصْحَابَ النَّارِ أَنْ قَدْ وَجَدْنَا مَا وَعَدَنَا رَبُّنَا حَقًّا فَهَلْ وَجَدْتُمْ مَا وَعَدَ رَبُّكُمْ حَقًّا ۖ قَالُوا نَعَمْ ۚ فَأَذَّنَ مُؤَذِّنٌ بَيْنَهُمْ أَنْ لَعْنَةُ اللَّهِ عَلَى الظَّالِمِينَ ﴿٤٤﴾

४४) र जन्नतवालाहरू नर्कमा बस्ने हरूलाई ठूलो स्वरमा भन्ने छन् कि, जुन वाचा हाम्रो पालनकर्ताले हामीसँग गरेको थियो, हामीले त्यसलाई सत्य पाएका छौं । के तिमीले पनि जुन वचन तिम्रो पालनकर्ताले तिमीसँग गरेको थियो त्यसलाई साँचो पायौ ?" तिनीहरूले उत्तर दिनेछन् हो, पायौं त्यतिखेर तिनीहरूबीच एउटा पुकार्ने मान्छेले कराएर भन्ने छ कि, अन्यायीहरूमाथि अल्लाहको धिक्कार होस् ।

الَّذِينَ يَصُدُّونَ عَنْ سَبِيلِ اللَّهِ وَيَبْغُونَهَا عِوَجًا وَهُمْ بِالْآخِرَةِ كَافِرُونَ ﴿٤٥﴾

४५) जसले अल्लाहको बाटोमा हिंड्नबाट रोक्दथे र त्यसैलाई बाङ्गो बनाउन खोज्दथे र कियामतको दिनलाई अस्वीकार गर्दथे ।

وَبَيْنَهُمَا حِجَابٌ ۚ وَعَلَى الْأَعْرَافِ رِجَالٌ يَعْرِفُونَ

४६) ती दुवै समूहको बीचमा एउटा

كُلًّا بِسِيمٰهُمْ ۚ وَنَادَوْا أَصْحٰبَ الْجَنَّةِ أَنْ سَلٰمٌ عَلَيْكُمْ ۚ لَمْ يَدْخُلُوهَا وَهُمْ يَطْمَعُونَ ﴿٤٦﴾

परदा (आवरण) हुनेछ र आराफमाथि धेरै मानिसहरू हुनेछन् । यिनीहरूले सबैलाई तिनका अनुहारबाट नै चिन्ने छन् र तिनीहरूले जन्नतवालाहरूलाई ठूलो स्वरमा पुकारेर भन्ने छन् कि, “तिमीमाथि शान्ति होस् ।” यी मानिसहरू अझै जन्नतमा प्रवेश पाएका हुँदैनन् तर त्यसको उम्मीदवार हुने छन् ।

وَإِذَا صُرِفَتْ أَبْصٰرُهُمْ تِلْقَاءَ أَصْحٰبِ النَّارِ ۙ قَالُوا رَبَّنَا لَا تَجْعَلْنَا مَعَ الْقَوْمِ الظّٰلِمِينَ ﴿٤٧﴾

४७) जब यिनीहरूका आँखा नर्कमा बस्नेहरूतिर पर्नेछ, त भन्ने छन् कि, “हे पालनकर्ता ! हामीलाई अत्याचारीहरूको साथमा शामिल नगर्नु ।”

وَنَادٰى أَصْحٰبُ الْأَعْرَافِ رِجَالًا يَعْرِفُونَهُمْ بِسِيمٰهُمْ قَالُوا مَا أَغْنٰى عَنْكُمْ جَمْعُكُمْ وَمَا كُنْتُمْ تَسْتَكْبِرُونَ ﴿٤٨﴾

४८) र आराफवाला व्यक्तिहरूले धेरै मानिसहरूलाई जसलाई तिनका अनुहारबाट चिनी राखेका हुन्छन् तिनीहरूलाई भन्ने छन्: कि, आज न त तिम्रो समूह कुनै काम आयो न त तिमीले ठूलो सम्झने कार्यले नै तिम्रो काम आयो ।”

أَهٰؤُلَاءِ الَّذِينَ أَقْسَمْتُمْ لَا يَنَالُهُمُ اللّٰهُ بِرَحْمَةٍ ۚ ادْخُلُوا الْجَنَّةَ لَا خَوْفٌ عَلَيْكُمْ وَلَا أَنْتُمْ تَحْزَنُونَ ﴿٤٩﴾

४९) “के यी तिनै मानिसहरू हुन् जसका बारेमा तिमीले शपथ लिने गर्दथ्यौ कि, अल्लाहले तिनीहरूलाई कृपा गर्दैन । तसर्थ तिमीहरू स्वर्गमा प्रवेश गरिहाल तिमीहरूलाई कुनै भय छैन, न त तिमीलाई कुनै प्रकारको दुःख छ न कुनै शोक हुनेछ ।

५०) र नर्कमा बस्नेहरूले स्वर्गमा बस्नेहरूसँग भन्नेछन् कि हामीमाथि थोरै जल हाल वा अल्लाहले तिमीहरूलाई दिएको छ त्यसबाट केही हामीलाई पनि देऊ । स्वर्गवालाहरूले जवाफ दनेछन्: कि, अल्लाहले दुवैकुरा (स्वर्गको पानी र जीविका) अधर्मीहरूको निम्ति निषेध गरेको छ ।

وَنَادَىٰٓ أَصۡحَٰبُ ٱلنَّارِ أَصۡحَٰبَ ٱلۡجَنَّةِ أَنۡ أَفِيضُواْ
عَلَيۡنَا مِنَ ٱلۡمَآءِ أَوۡ مِمَّا رَزَقَكُمُ ٱللَّهُۚ قَالُوٓاْ إِنَّ ٱللَّهَ
حَرَّمَهُمَا عَلَى ٱلۡكَٰفِرِينَ ٥٠

५१) जसले संसारमा आफ्नो धर्मलाई खेल, तामाशा बनाएका थिए र सांसारिक जीवनले तिनलाई धोखामा पारिसकेको थियो । जुन प्रकारले तिनीहरूले त्यसदिनको आगमनलाई बिर्सीदिएका थिए र हाम्रा आयतहरूलाई अस्वीकार गरेका थिए त्यस्तै आज हामीले पनि तिनीहरूलाई बिर्सी दिनेछौ ।

ٱلَّذِينَ ٱتَّخَذُواْ دِينَهُمۡ لَهۡوٗا وَلَعِبٗا وَغَرَّتۡهُمُ
ٱلۡحَيَوٰةُ ٱلدُّنۡيَاۚ فَٱلۡيَوۡمَ نَنسَىٰهُمۡ كَمَا نَسُواْ لِقَآءَ يَوۡمِهِمۡ
هَٰذَا وَمَا كَانُواْ بِـَٔايَٰتِنَا يَجۡحَدُونَ ٥١

५२) हामीले तिनीहरू छेउ एउटा यस्तो किताब पुऱ्याइ सकेका छौं जसलाई हामीले आफ्ना परिपक्व ज्ञानका आधारमा विस्तृत रूपमा वर्णन गरेका छौं र त्यो मोमिनहरूका लागि मार्गदर्शन र वरदान हो ।

وَلَقَدۡ جِئۡنَٰهُم بِكِتَٰبٖ فَصَّلۡنَٰهُ عَلَىٰ عِلۡمٍ هُدٗى
وَرَحۡمَةٗ لِّقَوۡمٖ يُؤۡمِنُونَ ٥٢

५३) के यिनीहरू यस प्रतीक्षामा छन, कि अन्तिम परिणाम सामुन्ने आई हालोस् । जुन दिन त्यो अन्तिम परिणाम अगाडि आउनेछ ती व्यक्ति जसले पहिले त्यसको उपेक्षा गरेका

هَلۡ يَنظُرُونَ إِلَّا تَأۡوِيلَهُۥۚ يَوۡمَ يَأۡتِي تَأۡوِيلُهُۥ
يَقُولُ ٱلَّذِينَ نَسُوهُ مِن قَبۡلُ قَدۡ جَآءَتۡ رُسُلُ
رَبِّنَا بِٱلۡحَقِّ فَهَل لَّنَا مِن شُفَعَآءَ فَيَشۡفَعُواْ لَنَآ
أَوۡ نُرَدُّ فَنَعۡمَلَ غَيۡرَ ٱلَّذِي كُنَّا نَعۡمَلُۚ قَدۡ خَسِرُوٓاْ
أَنفُسَهُمۡ وَضَلَّ عَنۡهُم مَّا كَانُواْ يَفۡتَرُونَ ٥٣

थिए भन्ने छन् “वास्तवमा हाम्रो पालनकर्ताका रसूल सत्य लिएर आएका थिए, के आज हामीलाई कोही सिफारिश गर्ने पाइन्छ जसले हाम्रो हकमा सिफारिश गरुन् ? वा के हामीलाई संसारमा फिर्ता पठाउन सकिन्छ ताकि जुन दुष्कर्म हामीले अघि गर्दथ्यौ त्यो नगरौं बरु तिनको विपरीत अन्य (असल) कर्म गरौं । निःसन्देह तिनीहरूले आफैलाई घाटामा पारेकाछन् र जे-जति मन गढन्ते कुरा यिनीहरूले गर्दथे ती सबै हराइसके ।”

إِنَّ رَبَّكُمُ ٱللَّهُ ٱلَّذِى خَلَقَ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ
فِى سِتَّةِ أَيَّامٍ ثُمَّ ٱسْتَوَىٰ عَلَى ٱلْعَرْشِ يُغْشِى ٱلَّيْلَ
ٱلنَّهَارَ يَطْلُبُهُۥ حَثِيثًا وَٱلشَّمْسَ وَٱلْقَمَرَ وَٱلنُّجُومَ
مُسَخَّرَٰتٍۭ بِأَمْرِهِۦٓ ۗ أَلَا لَهُ ٱلْخَلْقُ وَٱلْأَمْرُ ۗ تَبَارَكَ ٱللَّهُ
رَبُّ ٱلْعَٰلَمِينَ ﴿٥٤﴾

५४) कुनै सन्देह छैन कि, तिम्रो पालनकर्ता अल्लाह नै हो, जसले आकाशहरू र पृथ्वीलाई, छ (६) दिनमै सृष्टि गर्‍यो र त्यस पश्चात आफ्नो अर्श (सिंहसान) माथि उच्च भयो, उसैले रातीबाट दिनलाई यसरी ढाकिदिन्छ कि दिन रातीको पछि दौडेर आउँछ । र सूर्य, चन्द्र र ताराहरूको यसरी सृष्टि गर्‍यो कि सबै उसैको आदेशको अधीनमा हुन्छन् । हेर ! सम्पूर्ण सृष्टि उसैको हो र आदेश पनि उसैको हो । यो अल्लाह सर्वगुण सम्पन्न छ जो सबै ब्रह्माण्डको पालनकर्ता हो ।

ٱدْعُوا۟ رَبَّكُمْ تَضَرُّعًا وَخُفْيَةً ۚ إِنَّهُۥ لَا يُحِبُّ
ٱلْمُعْتَدِينَ ﴿٥٥﴾

५५) (मानिसहरू!) आफ्नो पालनकर्तासंग विनम्र विन्ती गर्ने गर ठूलो स्वरले र एकान्तमा प्रार्थना गर । वास्तवमा

अल्लाहले सीमा उल्लंघन गर्नेहरूलाई प्रेम गर्दैन ।

وَلَا تُفْسِدُوا فِي الْأَرْضِ بَعْدَ إِصْلَاحِهَا وَادْعُوهُ خَوْفًا وَطَمَعًا ۚ إِنَّ رَحْمَتَ اللَّهِ قَرِيبٌ مِّنَ الْمُحْسِنِينَ ﴿٥٦﴾

५६) पृथ्वीमा सुधार भइसकेपछि उपद्रव नगर्नु र अल्लाहसँग डराउँदै र आशा राख्दै प्रार्थना गर्दै गर्नु । कुनै शंका छैन कि अल्लाहको अनुकम्पा सत्कर्म गर्नेहरूको समीपमा छ ।

وَهُوَ الَّذِي يُرْسِلُ الرِّيَاحَ بُشْرًا بَيْنَ يَدَيْ رَحْمَتِهِ ۖ حَتَّىٰ إِذَا أَقَلَّتْ سَحَابًا ثِقَالًا سُقْنَاهُ لِبَلَدٍ مَّيِّتٍ فَأَنزَلْنَا بِهِ الْمَاءَ فَأَخْرَجْنَا بِهِ مِن كُلِّ الثَّمَرَاتِ ۚ كَذَٰلِكَ نُخْرِجُ الْمَوْتَىٰ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٥٧﴾

५७) र ऊ नै हो जसले आफ्नो अनुकम्पा (बर्षा) भन्दा अगाडी हवालाई शुभ सूचनाको रूपमा पठाउँदछ । यहाँसम्म कि जब त्यसले ठूला-ठूला बादलहरूलाई उचालेर ल्याउँछ तब हामीले त्यसलाई एउटा कुनै सुख्खा भू-भागतिर पठाइदिन्छौं । त्यसपछि बादलहरूबाट बृष्टि गराउँछौं, अनि त्यस बर्षाको जलबाट थरि-थरिका फल उत्पन्न गर्दछौं । यसै प्रकार हामीले मृतकहरूलाई (जीवित पारी) बाहिर निकाल्ने छौं । आशा छ कि तिमीले सदुपदेश ग्रहण गर्नेछौ ।

وَالْبَلَدُ الطَّيِّبُ يَخْرُجُ نَبَاتُهُ بِإِذْنِ رَبِّهِ ۖ وَالَّذِي خَبُثَ لَا يَخْرُجُ إِلَّا نَكِدًا ۚ كَذَٰلِكَ نُصَرِّفُ الْآيَاتِ لِقَوْمٍ يَشْكُرُونَ ﴿٥٨﴾

५८) जुन भूमि उर्बर र राम्रो छ त्यसबाट उम्रने कुरा पनि अल्लाहको आदेशले राम्रो नै हुन्छ, र जुन भूमि नराम्रो छ त्यसबाट जे उम्रन्छ काम नलाग्ने खराब हुन्छ । यसै प्रकार हामीले आफ्नो आयतहरूलाई (तर्कहरू) कृतज्ञहरूका लागि विभिन्न प्रकारले वर्णन गर्दछौं ।

لَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِۦ فَقَالَ يَٰقَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُۥٓ إِنِّىٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿٥٩﴾

५९) हामीले नूह (पैग़म्बर) लाई उनको जाति तिर पठायौं उनले भने कि, "हे मेरो जातिका मानिस ! अल्लाहको उपासना गर, उस बाहेक तिम्रो कोही पूजाको योग्य छैन । मलाई तिम्रो लागि एउटा ठूलो दिनको सजाय हुने डरछ ।

قَالَ الْمَلَأُ مِن قَوْمِهِۦٓ إِنَّا لَنَرَىٰكَ فِى ضَلَٰلٍ مُّبِينٍ ﴿٦٠﴾

६०) उनको जातिको नेताले भने कि, "हामीले तिमीलाई ठूलो रूपमा दिगभ्रान्त भएको देखिराखेका छौं ।"

قَالَ يَٰقَوْمِ لَيْسَ بِى ضَلَٰلَةٌ وَلَٰكِنِّى رَسُولٌ مِّن رَّبِّ الْعَٰلَمِينَ ﴿٦١﴾

६१) उनले (नूह अलै) भने: "हे मेरो जाति बन्धु ! ममा कुनै प्रकारको मार्गविचलन छैन, बरु म संसारको पालनकर्ताको पैगम्बर संदेशबाहक हूँ ।"

أُبَلِّغُكُمْ رِسَٰلَٰتِ رَبِّى وَأَنصَحُ لَكُمْ وَأَعْلَمُ مِنَ اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٦٢﴾

६२) तिमी छेउ आफ्नो पालनकर्ताको सन्देश पुऱ्याउँछु, र तिम्रो शुभेच्छुक हूँ र म अल्लाहको तर्फबाट यस्ता कुराहरूको जानकारी राख्दछु जसबारे तिमी अनभिज्ञ छौ ।

أَوَعَجِبْتُمْ أَن جَآءَكُمْ ذِكْرٌ مِّن رَّبِّكُمْ عَلَىٰ رَجُلٍ مِّنكُمْ لِيُنذِرَكُمْ وَلِتَتَّقُوا وَلَعَلَّكُمْ تُرْحَمُونَ ﴿٦٣﴾

६३) के तिमीलाई यस कुराको आश्चर्य लाग्यो कि, तिमीहरू मध्येबाटै एक व्यक्तिको हातबाट तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो समीपमा सदुपदेश आयो जसले तिमीलाई सावधान गराओस् र तिमी डर मान (र आत्मसंयमी बन) र ताकि तिमीमाथि दया गरियोस् ?

فَكَذَّبُوهُ فَأَنجَيْنَٰهُ وَٱلَّذِينَ مَعَهُۥ فِى ٱلْفُلْكِ وَأَغْرَقْنَا ٱلَّذِينَ كَذَّبُوا۟ بِـَٔايَٰتِنَآ ۚ إِنَّهُمْ كَانُوا۟ قَوْمًا عَمِينَ ﴿٦٤﴾

६४) तर तिनीहरूले उनलाई झूठा भने, अन्ततः हामीले नूह (अलै) लाई र जो उनको साथ ढुंगामा सवार थिए, बचाई हालें र जसले हाम्रो आयतहरूलाई झूठा भने तिनीहरूलाई डुबाई दियौं । निःसन्देह तिनी अन्धा मानिसहरू थिए ।

وَإِلَىٰ عَادٍ أَخَاهُمْ هُودًا ۗ قَالَ يَٰقَوْمِ ٱعْبُدُوا۟ ٱللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُۥٓ ۚ أَفَلَا تَتَّقُونَ ﴿٦٥﴾

६५) र आदको जातितिर उनीहरूकै दाजुभाइहरू मध्येका "हूदलाई" पठायौं । उनले भने कि "हे मेरा जाति बन्धुहरू ! अल्लाहको उपासना गर, त्यस बाहेक तिम्रो अरु कोही सत्य पुजनीय छैन, त के तिमीहरू डराउँदैनौ ?

قَالَ ٱلْمَلَأُ ٱلَّذِينَ كَفَرُوا۟ مِن قَوْمِهِۦٓ إِنَّا لَنَرَىٰكَ فِى سَفَاهَةٍ وَإِنَّا لَنَظُنُّكَ مِنَ ٱلْكَٰذِبِينَ ﴿٦٦﴾

६६) उनको जातिका सरदार जो काफिर थिए, भन्न थालेः कि, "हामीले तिमीलाई मूर्खतामा ग्रस्त भएको सम्झिदै छौं र हामीले तिमीलाई झूठा ठान्दछौं ।"

قَالَ يَٰقَوْمِ لَيْسَ بِى سَفَاهَةٌ وَلَٰكِنِّى رَسُولٌ مِّن رَّبِّ ٱلْعَٰلَمِينَ ﴿٦٧﴾

६७) उनले भनेः "हे मेरा जाति बन्धुहरू ! ममा मूर्खताको कुनै कुरा छैन, बरु म विश्वका पालनकर्ताको संदेश बाहक (पैगम्बर) हूँ ।

أُبَلِّغُكُمْ رِسَٰلَٰتِ رَبِّى وَأَنَا۠ لَكُمْ نَاصِحٌ أَمِينٌ ﴿٦٨﴾

६८) म तिमीहरूलाई अल्लाहको सन्देश पुऱ्याउँछु र तिम्रो शुभेच्छुक र हितैषी हूँ ।

أَوَعَجِبْتُمْ أَن جَآءَكُمْ ذِكْرٌ مِّن رَّبِّكُمْ عَلَىٰ رَجُلٍ مِّنكُمْ لِيُنذِرَكُمْ ۚ وَٱذْكُرُوٓا۟ إِذْ جَعَلَكُمْ خُلَفَآءَ مِنۢ بَعْدِ قَوْمِ نُوحٍ وَزَادَكُمْ فِى ٱلْخَلْقِ

६९) के तिमीलाई यस कुराबाट आश्चर्य लाग्यो कि, तिमीहरू मध्येबाट एउटा मानिसद्वारा तिम्रो पालन

بَصۜۡطَةً ۚ فَاذۡكُرُوٓاْ ءَالَآءَ ٱللَّهِ لَعَلَّكُمۡ تُفۡلِحُونَ ﴿٦٩﴾

कर्ताको तर्फबाट तिमी छेउ सत्यउपदेश आयो ताकि उसले तिमीलाई डरदेखाओस् ? र तिमी यो नभुल्नु कि तिम्रो पालनकर्ताले नूहको जाति पश्चात तिमीलाई त्यसको उत्तराधिकारी बनायो, र आकारमा तिमीलाई बढी व्यापकता प्रदान गऱ्यो, तसर्थ अल्लाहका अनुकम्पाहरूलाई स्मरण गर ताकि मुक्ति प्राप्त गर्न सक ।

قَالُوٓاْ أَجِئۡتَنَا لِنَعۡبُدَ ٱللَّهَ وَحۡدَهُۥ وَنَذَرَ مَا كَانَ يَعۡبُدُ ءَابَآؤُنَا ۖ فَأۡتِنَا بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿٧٠﴾

७०) तिनीहरूले भन्न थाले: के तपाई हामीतिर यस कारणले आउनु भएको हो कि हामीले एउटै अल्लाहको पूजा गर्न थालौं र जसलाई हाम्रा पूर्वजहरूले पूज्दै आएका थिए तिनलाई छाडिदिऔं ? तसर्थ यदि साँचो हौ भने, जुन सजायबाट हामीलाई डरदेखाई राखेका छौ त्यसलाई मँगाई देऊ ।

قَالَ قَدۡ وَقَعَ عَلَيۡكُم مِّن رَّبِّكُمۡ رِجۡسٌ وَغَضَبٌ ۖ أَتُجَٰدِلُونَنِي فِيٓ أَسۡمَآءٖ سَمَّيۡتُمُوهَآ أَنتُمۡ وَءَابَآؤُكُم مَّا نَزَّلَ ٱللَّهُ بِهَا مِن سُلۡطَٰنٖ ۚ فَٱنتَظِرُوٓاْ إِنِّي مَعَكُم مِّنَ ٱلۡمُنتَظِرِينَ ﴿٧١﴾

७१) हूदले भने: कि बस अब "हाम्रो पालनकर्ताको तर्फबाट तिमीमाथि सजाय र क्रोध आउने कुरा निश्चित भइसकेको छ के तिमी मसँग यस्ता नामहरूको बारेमा झगडा गरिराखेका छौ जुनकि तिमीले र तिम्रा बाबु बाजेले आफ्नै तर्फबाट नामाकरण गरेका हुन् जसको बारेमा अल्लाहले कुनै प्रमाण पठाएको छैन ? ठीकै छ तिमीले पनि प्रतिक्षा गरिराख म पनि तिम्रो साथमा प्रतिक्षा गर्दछु ।"

فَأَنجَيْنَٰهُ وَٱلَّذِينَ مَعَهُۥ بِرَحْمَةٍ مِّنَّا وَقَطَعْنَا دَابِرَ ٱلَّذِينَ كَذَّبُوا۟ بِـَٔايَٰتِنَا وَمَا كَانُوا۟ مُؤْمِنِينَ ﴿٧٢﴾

७२) त्यसछि हामीले हूदलाई र जुन मानिसहरू उनको साथमा थिए तिनीहरूलाई आफ्नो अनुकम्पाले बचायौं र जसले हाम्रा आयतहरूलाई झूठा भने तिनीहरूको जरा नै काटी दियौं । र तिनीहरू ईमान ल्याउने वाला थिएनन् ।

وَإِلَىٰ ثَمُودَ أَخَاهُمْ صَٰلِحًا قَالَ يَٰقَوْمِ ٱعْبُدُوا۟ ٱللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُۥ قَدْ جَآءَتْكُم بَيِّنَةٌ مِّن رَّبِّكُمْ هَٰذِهِۦ نَاقَةُ ٱللَّهِ لَكُمْ ءَايَةً فَذَرُوهَا تَأْكُلْ فِىٓ أَرْضِ ٱللَّهِ وَلَا تَمَسُّوهَا بِسُوٓءٍ فَيَأْخُذَكُمْ عَذَابٌ أَلِيمٌ ﴿٧٣﴾

७३) र हामीले समूदको जातितिर उनका भाइ "सालेहलाई(अलै)" पठायौ, सालेहले भने कि, "हे मेरा जाति बन्धुहरू! अल्लाह कै पूजा गर र उस बाहेक तिम्रो अरु कोही सत्य पूजनीय छैन तिमी छेउ तिम्रो पालनकर्ताबाट एउटा स्पष्ट प्रमाण आइसकेको छ । यो ऊँटनी अल्लाहको तर्फबाट हो र तिम्रो निम्ति एक (चमत्कारको रूपमा) प्रमाण छ । तसर्थ यसलाई स्वतन्त्र छाडिदेऊ कि अल्लाहको जमिनमा चरदै घुमोस् । र तिमीले यसलाई नराम्रो नियतले छुदै नछुनु अन्यथा कष्ट दायक दण्डले तिमीलाई समाती हाल्छ ।"

وَٱذْكُرُوٓا۟ إِذْ جَعَلَكُمْ خُلَفَآءَ مِنۢ بَعْدِ عَادٍ وَبَوَّأَكُمْ فِى ٱلْأَرْضِ تَتَّخِذُونَ مِن سُهُولِهَا قُصُورًا وَتَنْحِتُونَ ٱلْجِبَالَ بُيُوتًا فَٱذْكُرُوٓا۟ ءَالَآءَ ٱللَّهِ وَلَا تَعْثَوْا۟ فِى ٱلْأَرْضِ مُفْسِدِينَ ﴿٧٤﴾

७४) र तिमी स्मरण गर त्यस समयलाई कि अल्लाहले तिमीलाई आदको जातिपछि उत्तराधिकारी बनायो र पृथ्वीमा तिमीलाई यो स्थान प्रदान गर्‍यो कि आज तिमीले अल्लाहको समतल भूमिमा महल बनाउँछौ र पहाडहरूलाई काटछाँड गरी घर

बनाउँदछौ । अल्लाहका वरदान हरूलाई स्मरण गर र पृथ्वीमा उपद्रव गर्दै नहिंड ।

قَالَ الْمَلَأُ الَّذِينَ اسْتَكْبَرُوا مِن قَوْمِهِ لِلَّذِينَ اسْتُضْعِفُوا لِمَنْ آمَنَ مِنْهُمْ أَتَعْلَمُونَ أَنَّ صَالِحًا مُّرْسَلٌ مِّن رَّبِّهِ ۚ قَالُوا إِنَّا بِمَا أُرْسِلَ بِهِ مُؤْمِنُونَ ﴿٧٥﴾

७५) अनि उनको जातिका जो अभिमानी बनेका थिए उनीहरूले कम्जोर वर्गहरूसँग जसले कि ईमान ल्याई सकेका थिए भन्न थाले: कि, “के तिमीले विश्वास गर्दछौ कि सालेह(अलैं:) आफ्नो पालनकर्ताबाट पठाइएका हुन् ।” उनीहरूले भने, “हो जुन कुरा उनलाई दिएर पठाइएको छ हामीले त्यसमा नि:सन्देह विश्वास गर्दछौ ।

قَالَ الَّذِينَ اسْتَكْبَرُوا إِنَّا بِالَّذِي آمَنتُم بِهِ كَافِرُونَ ﴿٧٦﴾

७६) त्यसपछि ती घमण्डी सरदारहरूले भन्न थाले: कि, जुन कुरामा तिमीले विश्वास गरेका छौ हामीले त त्यसलाई मान्दैनौ ।

فَعَقَرُوا النَّاقَةَ وَعَتَوْا عَنْ أَمْرِ رَبِّهِمْ وَقَالُوا يَا صَالِحُ ائْتِنَا بِمَا تَعِدُنَا إِن كُنتَ مِنَ الْمُرْسَلِينَ ﴿٧٧﴾

७७) अनन्त: तिनीहरूले त्यस ऊँटनीलाई घुँड़ा काटेर मारि दिए । र आफ्नो पालनकर्ताको आदेश पूर्ण रूपमा उल्लंघन गरे र “सालेहसँग” भने कि, जुन कुराबाट तिमीले हामीलाई डराउँदथ्यौ यदि तिमी अल्लाहको संदेशबाहक हौ भने त्यो हामीमाथि ल्याऊ ।”

فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٧٨﴾

७८) अनि तिनलाई भूकम्पले आई समात्यो र तिनीहरू आफ्ना घरहरूमा लम्पसार परिरहे ।

فَتَوَلّٰى عَنْهُمْ وَقَالَ يٰقَوْمِ لَقَدْ اَبْلَغْتُكُمْ رِسَالَةَ رَبِّيْ وَنَصَحْتُ لَكُمْ وَلٰكِنْ لَّا تُحِبُّوْنَ النّٰصِحِيْنَ ﴿٧٩﴾

७९) त्यसपछि सालेह(अलै) (निराश भई) फर्के र भने कि हे मेरो जाति बन्धुहरू! मैले त तिमीहरूलाई अल्लाहको सन्देश पुऱ्याइ हालें, तिम्रै हितको कुरा गरें, तर तिमीहरू यस्ता हौ कि शुभेच्छुकलाई मित्र ठान्दैनौ ।

وَلُوْطًا اِذْ قَالَ لِقَوْمِهٖٓ اَتَاْتُوْنَ الْفَاحِشَةَ مَا سَبَقَكُمْ بِهَا مِنْ اَحَدٍ مِّنَ الْعٰلَمِيْنَ ﴿٨٠﴾

८०) र हामीले लूतलाई (अलै) पैगम्बर बनाएर पठायौं, त्यति बेला उनले आफ्नो जातसँग भने तिमी यस्तो निर्लज्ज काम गर्दछौ कि जुन काम तिमी भन्दा अगाडि विश्वमा कसैले गरेनन् ।

اِنَّكُمْ لَتَاْتُوْنَ الرِّجَالَ شَهْوَةً مِّنْ دُوْنِ النِّسَآءِ ۭ بَلْ اَنْتُمْ قَوْمٌ مُّسْرِفُوْنَ ﴿٨١﴾

८१) तिमीहरूले स्वास्नी मानिसहरूलाई छाडि केटाहरूसंग कुकर्म गर्दछौ । वास्तवमा तिमीहरूले त सीमाको उल्लंघन नै गरिसकेका छौ ।

وَمَا كَانَ جَوَابَ قَوْمِهٖٓ اِلَّآ اَنْ قَالُوْٓا اَخْرِجُوْهُمْ مِّنْ قَرْيَتِكُمْ ۚ اِنَّهُمْ اُنَاسٌ يَّتَطَهَّرُوْنَ ﴿٨٢﴾

८२) तर तिनीहरूबाट यस बाहेक कुनै उत्तर आउन सकेन: कि, "यिनीहरूलाई (लूत र तिनका घरवालालाई) आफ्नो गाउँबाट निकाली दिनु पऱ्यो (किनभने) यिनीहरू बड़ो पवित्र बन्न चाहन्छन् ।"

فَاَنْجَيْنٰهُ وَاَهْلَهٗٓ اِلَّا امْرَاَتَهٗ ڮ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٨٣﴾

८३) अनि हामीले लूत (अलै.) लाई र उनका घरवालाहरूलाई बचाइ हाल्यौं, तर तिनको स्वास्नी बच्न सकिन्न, किनभने उनी तिनीहरू-मध्येकी थिइन् जो सजाय भागी थिए ।

وَأَمْطَرْنَا عَلَيْهِمْ مَّطَرًا ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِينَ ﴿٨٤﴾

८४) र हामीले तिनीहरूमाथि विशेष प्रकारको (ढुङ्गाको) वर्षा गऱ्यौं, तसर्थ हेर त ती अत्याचारीहरूको अन्त कस्तो भयो ।

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا ۗ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ قَدْ جَاءَتْكُم بَيِّنَةٌ مِّن رَّبِّكُمْ ۖ فَأَوْفُوا الْكَيْلَ وَالْمِيزَانَ وَلَا تَبْخَسُوا النَّاسَ أَشْيَاءَهُمْ وَلَا تُفْسِدُوا فِي الْأَرْضِ بَعْدَ إِصْلَاحِهَا ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُم مُّؤْمِنِينَ ﴿٨٥﴾

८५) र हामीले "मदयन" तिर उनको भाइ "शुऐबलाई" (अलै) पठायौं । उनले भनेः कि "हे मेरा जाति बन्धुहरू ! अल्लाहकै पूजा गर, उस बाहेक तिम्रो अरु कुनै सत्य पूजनीय छैन ।" तिमी छेउ तिम्रो पालनकर्ताबाट स्पष्ट निशानी आइ सकेको छ, तसर्थ तिमीले नाप-तौल पूरा-पूर गर्ने गर र मानिसहरूलाई उनीहरूका चिजको मात्रा घटाई नदिने गर र पृथ्वीमा सुधार पछि खराबी उत्पन्न न गर । यदि तिमी ईमान वाला भएका छौ भने बुझिहाल यो तिम्रो हकमा राम्रो छ ।

وَلَا تَقْعُدُوا بِكُلِّ صِرَاطٍ تُوعِدُونَ وَتَصُدُّونَ عَن سَبِيلِ اللَّهِ مَنْ آمَنَ بِهِ وَتَبْغُونَهَا عِوَجًا ۚ وَاذْكُرُوا إِذْ كُنتُمْ قَلِيلًا فَكَثَّرَكُمْ ۖ وَانظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِينَ ﴿٨٦﴾

८६) र प्रत्येक बाटोमा यस आसयका साथ बस्ने नगर, कि जो व्यक्ति अल्लाहमाथि आस्था राख्दछ उसलाई तिमीले धम्काऊ र अल्लाहको बाटोबाट रोक, र सिधा बाटोमा बाङ्गोपन खोज्दै गर । र त्यस बेलालाई स्मरण गर, जब तिमी अल्प संख्यामा थियौ अनि अल्लाहले तिमीहरूलाई ठूलो समूहमा परिणत गरिदियो र हेर कि खराबी सृजना गर्नेहरूको अंत कस्तो भएको छ ।

وَإِنْ كَانَ طَآئِفَةٌ مِّنْكُمْ اٰمَنُوْا بِالَّذِيْٓ اُرْسِلْتُ بِهٖ وَطَآئِفَةٌ لَّمْ يُؤْمِنُوْا فَاصْبِرُوْا حَتّٰى يَحْكُمَ اللّٰهُ بَيْنَنَا ۚ وَهُوَ خَيْرُ الْحٰكِمِيْنَ ﴿٨٧﴾

८७) र यदि तिमीहरू मध्येबाट एउटा समूहले त्यस आदेशमाथि ईमान ल्याएका छन् जुन मलाई दिएर पठाइएको छ । र एक समूहले ईमान ल्याएको छैन भने अलि सन्तोष (संयम) गर जबसम्म कि अल्लाहले हाम्रो र तिम्रो बीच कुनै निर्णय गर्दैन र ऊ सबभन्दा राम्रो निर्णय कर्ता छ ।

قَالَ الْمَلَاُ الَّذِيْنَ اسْتَكْبَرُوْا مِنْ قَوْمِهٖ لَنُخْرِجَنَّكَ يٰشُعَيْبُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَكَ مِنْ قَرْيَتِنَآ اَوْ لَتَعُوْدُنَّ فِيْ مِلَّتِنَا ۗ قَالَ اَوَلَوْ كُنَّا كٰرِهِيْنَ ﴿٨٨﴾

८८) (त्यसपछि) उनका जातिका मुखिया र अभिमानी मानिसहरूले भन्नथाले: कि हे शुऐब ! हामी तिमीलाई र जुन मानिसहरू तिम्रो साथमा ईमान ल्याएका छन् उनलाई आफ्ना नगरबाट निकाली दिने छौं यदि तिमीहरूले हाम्रो धर्मलाई स्वीकार गरेनौ भने । शोऐब (अलै) ले भने म तिम्रो धर्ममा जान घृणा गर्दछु भने तापनि ।

قَدِ افْتَرَيْنَا عَلَى اللّٰهِ كَذِبًا اِنْ عُدْنَا فِيْ مِلَّتِكُمْ بَعْدَ اِذْ نَجّٰىنَا اللّٰهُ مِنْهَا ۗ وَمَا يَكُوْنُ لَنَآ اَنْ نَّعُوْدَ فِيْهَآ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ رَبُّنَا ۗ وَسِعَ رَبُّنَا كُلَّ شَيْءٍ عِلْمًا ۗ عَلَى اللّٰهِ تَوَكَّلْنَا ۗ رَبَّنَا افْتَحْ بَيْنَنَا وَبَيْنَ قَوْمِنَا بِالْحَقِّ وَاَنْتَ خَيْرُ الْفٰتِحِيْنَ ﴿٨٩﴾

८९) अल्लाहले हामीलाई त्यसबाट उद्धार गरिसके पछि यदि हामी तिम्रो धर्ममा फर्क्यौं भने निःसन्देह हामी अल्लाह प्रति झूठको आरोप लगाएको ठहरिन्छौं, बरु हाम्रो पालनकर्ता, अल्लाहको इच्छा बिना त्यसतर्फ फर्कनु सम्भव छैन । हाम्रो रबको ज्ञान हरेक कुरालाई घेरामा लिएको छ । हामी अल्लाहमाथि नै भरोसा गर्दछौं । हे पालनकर्ता ! हामी र हाम्रा समुदायको बीचमा

निश्चित न्याय निसाफ गरिदेऊ । र तिमी सबैभन्दा राम्रो न्यायकर्ता हौ ।

وَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ لَئِنِ اتَّبَعْتُمْ شُعَيْبًا إِنَّكُمْ إِذًا لَّخَاسِرُونَ ﴿٩٠﴾

९०) र उनका समूहको काफिर नाइकेहरूले भने: “यदि तिमीहरू शुऐब (अलै.) को मार्गमा हिंड्छौ भने निश्चय नै ठूलो नोक्सानी बेहोर्नेछौ ।”

فَأَخَذَتْهُمُ الرَّجْفَةُ فَأَصْبَحُوا فِي دَارِهِمْ جَاثِمِينَ ﴿٩١﴾

९१) अनि तिनीहरूलाई भुकम्पले आइसमात्यो । तसर्थ तिनीहरूआफ्ना घरहरूमा घोप्टो परेको परै भए ।

الَّذِينَ كَذَّبُوا شُعَيْبًا كَأَن لَّمْ يَغْنَوْا فِيهَا ۚ الَّذِينَ كَذَّبُوا شُعَيْبًا كَانُوا هُمُ الْخَاسِرِينَ ﴿٩٢﴾

९२) जसले शुऐब (अलै.)लाई झूठा भनेका थिए तिनीहरूको यस्तो अवस्था भइहाल्यो जस्तो कि यी घरहरूमा कहिल्यै बसेकै थिएनन् । जसले शुऐब (अलै.) लाई झूठो भनेका थिए तिनीहरूनै घाटामा परिहाले ।

فَتَوَلَّىٰ عَنْهُمْ وَقَالَ يَا قَوْمِ لَقَدْ أَبْلَغْتُكُمْ رِسَالَاتِ رَبِّي وَنَصَحْتُ لَكُمْ ۖ فَكَيْفَ آسَىٰ عَلَىٰ قَوْمٍ كَافِرِينَ ﴿٩٣﴾

९३) अनि शुऐब (अलै.) उनीहरूबाट विमुख भई हिंडेर भन्न थाले: कि हे मेरा जातिबन्धु ! मैले तिमीलाई आफ्नो पालनकर्ताको सन्देशहरू पुऱ्याइएको थिएँ र मैले तिम्रो हितको कुरा गरेको थिएँ । तसर्थ म यी काफिहरूमाथि दुखप्रकट किन गरूँ ?

وَمَا أَرْسَلْنَا فِي قَرْيَةٍ مِّن نَّبِيٍّ إِلَّا أَخَذْنَا أَهْلَهَا بِالْبَأْسَاءِ وَالضَّرَّاءِ لَعَلَّهُمْ يَضَّرَّعُونَ ﴿٩٤﴾

९४) र हामीले कुनै पनि बस्तिमा कुनै नबिलाई पठाएका छैनौं परन्तु त्यहाँका मानिसहरूलाई अभाव र संकटमा पाऱ्यौं । ताकि उनीहरू याचना विन्ति गरुन् ।

ثُمَّ بَدَّلْنَا مَكَانَ السَّيِّئَةِ الْحَسَنَةَ حَتّٰى عَفَوْا وَّقَالُوْا قَدْ مَسَّ اٰبَآءَنَا الضَّرَّآءُ وَالسَّرَّآءُ فَاَخَذْنٰهُمْ بَغْتَةً وَّهُمْ لَا يَشْعُرُوْنَ ﴿٩٥﴾

९५) अनि हामीले त्यस दुःखको अवस्थालाई खुशियालीमा बदलिदियौं, यहाँसम्म कि उनको निकै विकास भयो, र भन्नथाले कि हाम्रा पूर्वजलाई पनि दुःख र सुख भएको थियो त हामीले उनीहरूलाई एक्कासी समातिहाल्यौं र उनीहरूलाई थाहा पनि थिएन ।

وَلَوْ اَنَّ اَهْلَ الْقُرٰۤى اٰمَنُوْا وَاتَّقَوْا لَفَتَحْنَا عَلَيْهِمْ بَرَكٰتٍ مِّنَ السَّمَآءِ وَالْاَرْضِ وَلٰكِنْ كَذَّبُوْا فَاَخَذْنٰهُمْ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٩٦﴾

९६) र यदि यी बस्तीहरूका मानिसहरूले ईमान ल्याएको र परहेजगारी अपनाएको भए हामीले उनीहरूमाथि आकाश र पृथ्वीका बरदानहरू खोली दिन्थ्यौं, तर उनीहरूले झुठ्ठा भने अनि हामीले उनका क्रियाकलापका कारण उनीहरूलाई समातिहाल्यौं ।

اَفَاَمِنَ اَهْلُ الْقُرٰۤى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا بَيَاتًا وَّهُمْ نَآئِمُوْنَ ﴿٩٧﴾

९७) के तैपनि यस बस्तीका मानिसहरू यस कुराबाट निश्चिन्त छन् कि उनीहरूमाथि हाम्रो अज़ाब रातिको समयमा आइहालोस् जबकि उनीहरू सुतिराखेका हुनेछन् ।

اَوَ اَمِنَ اَهْلُ الْقُرٰۤى اَنْ يَّاْتِيَهُمْ بَاْسُنَا ضُحًى وَّهُمْ يَلْعَبُوْنَ ﴿٩٨﴾

९८) र के यी बस्तीका मानिसहरू यस कुराबाट निश्चिन्त भइहालेका छन् कि तिनीहरूमाथि हाम्रो प्रकोप दिउँसो आई हालोस, जबकि उनीहरू आफ्नो खेलहरूमा ब्यस्त हुनेछन् ?

اَفَاَمِنُوْا مَكْرَ اللّٰهِ ۚ فَلَا يَاْمَنُ مَكْرَ اللّٰهِ اِلَّا الْقَوْمُ الْخٰسِرُوْنَ ﴿٩٩﴾

९९) तसर्थ के तिनीहरू अल्लाहको पकडबाट निश्चिन्त भइहाले ? अतः अल्लाहको पकडबाट ती बाहेक जो घाटामा पर्नेवाला छन्, अरु कोही निश्चिन्त हुँदैन ।

أَوَلَمْ يَهْدِ لِلَّذِينَ يَرِثُونَ الْأَرْضَ مِنْ بَعْدِ أَهْلِهَا أَنْ لَوْ نَشَاءُ أَصَبْنَاهُمْ بِذُنُوبِهِمْ ۚ وَنَطْبَعُ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَسْمَعُونَ ﴿١٠٠﴾

१००) र के यिनीहरूलाई जो पृथ्वीका उत्तराधिकारी भए, त्यहाँका मानिसहरूको मृत्यु पश्चात (यी घटनाहरूपछि) यो कुरा भनिएन कि यदि हामीले चाह्यौं भने तिनका अपराधका कारण तिनलाई समाप्त गर्न सक्छौं र हामी तिनका हृदयमा छाप लगाउन सक्छौं अनि तिनीहरू सुन्न नसकुन् ।

تِلْكَ الْقُرَىٰ نَقُصُّ عَلَيْكَ مِنْ أَنْبَائِهَا ۚ وَلَقَدْ جَاءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنَاتِ فَمَا كَانُوا لِيُؤْمِنُوا بِمَا كَذَّبُوا مِنْ قَبْلُ ۚ كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ قُلُوبِ الْكَافِرِينَ ﴿١٠١﴾

१०१) यी बस्तिहरूका केही वृतान्त हामीले तपाईंलाई वर्णन गरिराखेका छौं र उनीहरूका पैग़म्बर उनीहरूको पासमा निशानीहरू लिएर आए, तर यस्तो भएन कि उनीहरूले जुन कुरालाई प्रारम्भमा झूठा भनिसकेका थिए त्यसमा फेरि विश्वास गरुन् । अल्लाह यस्तै प्रकारले काफिरहरूको हृदयमा छाप लगाइदिन्छ ।

وَمَا وَجَدْنَا لِأَكْثَرِهِمْ مِنْ عَهْدٍ ۖ وَإِنْ وَجَدْنَا أَكْثَرَهُمْ لَفَاسِقِينَ ﴿١٠٢﴾

१०२) र कतिपय मानसिहरूमा हामीले वचन पालना गर्ने प्रतिबद्धता देखेनौं र हामीले धेरैलाई उल्लंघनकारी नै पायौं ।

ثُمَّ بَعَثْنَا مِنْ بَعْدِهِمْ مُوسَىٰ بِآيَاتِنَا إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَظَلَمُوا بِهَا ۖ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُفْسِدِينَ ﴿١٠٣﴾

१०३) अनि यिनीहरू पछि हामीले "मूसा (अलै.)" लाई निशानीहरू दिएर फिरऔन र उसका नाइकेहरूको पासमा पठायौं तर तिनीहरूले, ती (निशानी-हकप्रति) अत्याचार गरे तसर्थ हेर्नुस्, यी उद्दण्डहरूको परिणाम के भयो ?

१०४) र मूसा(अलै.)ले भने, कि हे फिरऔन ! म संसारको पालनकर्ताको तर्फबाट पैग़म्बर हूँ ।

وَقَالَ مُوسَىٰ يَٰفِرْعَوْنُ إِنِّى رَسُولٌ مِّن رَّبِّ ٱلْعَٰلَمِينَ ﴿١٠٤﴾

१०५) मेरो निम्ति यो अनिवार्य छ कि सत्य बाहेक अल्लाहको बारेमा केही नभनूँ । मैले तिम्रो पासमा तिम्रो पालनकर्ताको तर्फबाट एउटा ठूलो निशानी पनि ल्याएको छुँ । तसर्थ तिमीले बनी इस्राईललाई मेरो साथमा पठाइदेऊ ।

حَقِيقٌ عَلَىٰٓ أَن لَّآ أَقُولَ عَلَى ٱللَّهِ إِلَّا ٱلْحَقَّ ۚ قَدْ جِئْتُكُم بِبَيِّنَةٍ مِّن رَّبِّكُمْ فَأَرْسِلْ مَعِىَ بَنِىٓ إِسْرَٰٓءِيلَ ﴿١٠٥﴾

१०६) फिरऔनले भन्यो, "यदि तिमीले कुनै निशानी लिएर आएका छौ भने त्यो अब प्रस्तुत गर ! यदि तिमी सच्चा हौ भने ।

قَالَ إِن كُنتَ جِئْتَ بِـَٔايَةٍ فَأْتِ بِهَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿١٠٦﴾

१०७) तसर्थ उहाँले (मूसा अलै.ले) आफ्नो लठ्ठी खसाल्नु भयो, अनि त्यतिखेरै त्यो एकाएक एउटा अजिङ्गर बनिहाल्यो ।

فَأَلْقَىٰ عَصَاهُ فَإِذَا هِىَ ثُعْبَانٌ مُّبِينٌ ﴿١٠٧﴾

१०८) र आफ्नो हात बाहिर निकाल्नु भयो अनि त्यो एक्कासी सबै हेर्नेहरूको अगाडि धेरै टल्कीलो भइहाल्यो ।

وَنَزَعَ يَدَهُۥ فَإِذَا هِىَ بَيْضَآءُ لِلنَّٰظِرِينَ ﴿١٠٨﴾

१०९) फिरऔनको समूहका नाइकेहरूले भने, : साँच्चै नै यो मान्छे ठूलो जादूगर छ ।

قَالَ ٱلْمَلَأُ مِن قَوْمِ فِرْعَوْنَ إِنَّ هَٰذَا لَسَٰحِرٌ عَلِيمٌ ﴿١٠٩﴾

११०) यसले चाहन्छ कि तिमीहरूलाई तिम्रो (भूमि) देशबाट बाहिर निकालिदिओस् । तसर्थ तिमीहरू के सल्लाह दिन्छौ ?

يُرِيدُ أَن يُخْرِجَكُم مِّنْ أَرْضِكُمْ ۖ فَمَاذَا تَأْمُرُونَ ﴿١١٠﴾

१११) तिनीहरूले भनेः कि तपाईंले यसलाई र यसको भाइलाई केही समय दिनुस् र शहरहरूमा सन्देशवाहकहरू पठाइदिनुस् ।

قَالُوْٓا اَرْجِهْ وَاَخَاهُ وَاَرْسِلْ فِي الْمَدَآئِنِ حٰشِرِيْنَ ﴿١١١﴾

११२) ताकि उनीहरूले सबै ठूला जादूगरहरूलाई तपाईंको पासमा ल्याएर हाजिर गरुन् ।

يَاْتُوْكَ بِكُلِّ سٰحِرٍ عَلِيْمٍ ﴿١١٢﴾

११३) र ती जादूगरहरू फिरऔन सामु आइपुगे र भन्नथालेः "यदि हामी विजयी भयौं त के हामीलाई कुनै ठूलो पुरस्कार प्राप्त हुनेछ ?

وَجَآءَ السَّحَرَةُ فِرْعَوْنَ قَالُوْٓا اِنَّ لَنَا لَاَجْرًا اِنْ كُنَّا نَحْنُ الْغٰلِبِيْنَ ﴿١١٣﴾

११४) फिरऔनले भन्योः हो, र तिमी मेरो नजिकका मानिसहरू मध्येका हुनेछौ ।

قَالَ نَعَمْ وَاِنَّكُمْ لَمِنَ الْمُقَرَّبِيْنَ ﴿١١٤﴾

११५) यी जादूगरहरूले भनेः कि हे मूसा (अलै.) ! या त तपाईंले पहिला चलाउनुस् या त हामीले चलाउन्छौं ।

قَالُوْا يٰمُوْسٰٓى اِمَّآ اَنْ تُلْقِيَ وَاِمَّآ اَنْ نَّكُوْنَ نَحْنُ الْمُلْقِيْنَ ﴿١١٥﴾

११६) मूसा (अलै.)ले भनेः "तिमी नै चलाऊ" । अनि जब उनिहरूले (आफ्नो जादू) चलाए त मानिसहरूका आँखा बन्द गरिहाले र उनीहरूलाई भयभीत गरिदिए र एक ठूलो जादूको प्रदर्शन गरे ।

قَالَ اَلْقُوْا ۚ فَلَمَّآ اَلْقَوْا سَحَرُوْٓا اَعْيُنَ النَّاسِ وَاسْتَرْهَبُوْهُمْ وَجَآءُوْ بِسِحْرٍ عَظِيْمٍ ﴿١١٦﴾

११७) र हामीले मूसा(अलै.)लाई आदेश दियौंः कि आफ्नो लट्ठी खसाली हाल्नुस् तसर्थ लट्ठी खसाल्नसाथ त्यसले उनीहरूले रचेको सबै स्वाङ निल्न थाल्यो ।

وَاَوْحَيْنَآ اِلٰى مُوْسٰٓى اَنْ اَلْقِ عَصَاكَ ۚ فَاِذَا هِيَ تَلْقَفُ مَا يَاْفِكُوْنَ ﴿١١٧﴾

११८) यसप्रकार सत्य प्रकट भइहाल्यो र उनीहरले जे जति बनाएका थिए मिथ्या भइहाल्यो ।

فَوَقَعَ الْحَقُّ وَبَطَلَ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١١٨﴾

११९) अतः उनीहरू त्यसबेला पराजित भए र अपमानित भई फर्के ।

فَغُلِبُوْا هُنَالِكَ وَانْقَلَبُوْا صٰغِرِيْنَ ﴿١١٩﴾

१२०) र जादूगरहरू सज़दामा गइहाले ।

وَاُلْقِيَ السَّحَرَةُ سٰجِدِيْنَ ﴿١٢٠﴾

१२१) भन्नथाले: कि हामीले सम्पूर्ण जगत्को स्वामीमाथि ईमान ल्यायौं ।

قَالُوْٓا اٰمَنَّا بِرَبِّ الْعٰلَمِيْنَ ﴿١٢١﴾

१२२) जो मूसा(अलै.) र हारूनको पनि स्वामी हो ।

رَبِّ مُوْسٰى وَهٰرُوْنَ ﴿١٢٢﴾

१२३) फिरऔनले भन्नथाल्यो: के तिमीहरूले मैले अनुमति दिनुभन्दा अगाडि नै मूसा(अलै.) मा विश्वास गरिहाल्यौ ? निःसन्देह यो एउटा षडयन्त्र थियो जसको तिमीले यस नगरमा कार्यान्वयन गऱ्यौ, ताकि त्यसका निवासीहरूलाई यहाँबाट निकाल्न सक । तसर्थ अब तिमीलाई वास्तविकता थाहा भइहाल्नेछ ।

قَالَ فِرْعَوْنُ اٰمَنْتُمْ بِهٖ قَبْلَ اَنْ اٰذَنَ لَكُمْ ۚ اِنَّ هٰذَا لَمَكْرٌ مَّكَرْتُمُوْهُ فِى الْمَدِيْنَةِ لِتُخْرِجُوْا مِنْهَآ اَهْلَهَا ۚ فَسَوْفَ تَعْلَمُوْنَ ﴿١٢٣﴾

१२४) म तिम्रो एकतिरको हात र अर्कोतिरको खुट्टा काटिदिनेछु अनि तिमीहरू सबैलाई झुन्ड्याइदिनेछु ।

لَاُقَطِّعَنَّ اَيْدِيَكُمْ وَاَرْجُلَكُمْ مِّنْ خِلَافٍ ثُمَّ لَاُصَلِّبَنَّكُمْ اَجْمَعِيْنَ ﴿١٢٤﴾

१२५) उनीहरूले भने: कि हामी (मरेर) पनि आफ्नो मालिकको पासमै जानेछौं ।

قَالُوْٓا اِنَّآ اِلٰى رَبِّنَا مُنْقَلِبُوْنَ ﴿١٢٥﴾

१२६) र तिमीले हामीमा कुन त्रुटि देखेका छौ यसबाहेक कि हामीले आफ्ना पालनकर्ताको निशानीहरूमा विश्वास गऱ्यौं, जब तिनी हाम्रो पासमा

وَمَا تَنْقِمُ مِنَّآ اِلَّآ اَنْ اٰمَنَّا بِاٰيٰتِ رَبِّنَا لَمَّا جَاۤءَتْنَا ۗ رَبَّنَآ اَفْرِغْ عَلَيْنَا صَبْرًا وَّتَوَفَّنَا مُسْلِمِيْنَ ﴿١٢٦﴾

आए । हे पालनकर्ता ! हामीलाई धैर्य प्रदान गर र हाम्रो प्राण ईमान ल्याएकै अवस्थामा निकाल ।

१२७) र फिरऔनको समूहका नाइकेहरूले भने: के तपाईंले मूसा(अलै.) र उनको जातिलाई यत्तिकै छाडिदिनुहुन्छ ताकि उनीहरू देशमा उपद्रव गर्दै हिंडुन् र तपाईंलाई र तपाईंका देवताहरूलाई परित्याग गरिहालुन् ? फिरऔनले भन्यो, "कि हामीले उनीहरूका छोराहरूलाई अहिले नै मार्न प्रारम्भ गरिहाल्नेछौं र उनीहरूका स्त्रीहरूलाई जीवित रहनदिनेछौं र हामी उनीहरूमाथि शक्ति सम्पन्न छौं ।"

وَقَالَ الْمَلَاُ مِنْ قَوْمِ فِرْعَوْنَ اَتَذَرُ مُوْسٰى وَقَوْمَهٗ لِيُفْسِدُوْا فِى الْاَرْضِ وَيَذَرَكَ وَاٰلِهَتَكَ ؕ قَالَ سَنُقَتِّلُ اَبْنَآءَهُمْ وَنَسْتَحْیٖ نِسَآءَهُمْ ۚ وَاِنَّا فَوْقَهُمْ قٰهِرُوْنَ ﴿۱۲۷﴾

१२८) मूसा(अलै.)ले आफ्नो जातिबन्धुसित भने, "अल्लाहको सहारा प्राप्त गर र धैर्य राख, यो धर्ती अल्लाहको हो, उसले आफ्ना भक्तहरूमध्ये जसलाई चाहन्छ उसको मालिक बनाइदिन्छ र अन्तिम सफलता तिनैको हुन्छ जो अल्लाहसित डर मान्छन् ।"

قَالَ مُوْسٰى لِقَوْمِهِ اسْتَعِيْنُوْا بِاللّٰهِ وَاصْبِرُوْا ۚ اِنَّ الْاَرْضَ لِلّٰهِ ۙ يُوْرِثُهَا مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ ؕ وَالْعَاقِبَةُ لِلْمُتَّقِيْنَ ﴿۱۲۸﴾

१२९) मूसाको जातिका मानिसहरूले भने, "हामी त सधैं उत्पीडनमा रहयौं, तपाईं आउनुभन्दा अगाडि पनि र पछाडि पनि ।" मूसा(अलै.)ले भने, "छिट्टै अल्लाहले तिम्रा शत्रुलाई नष्ट पारिदिने छ र उनीहरूको सट्टा तिमीहरूलाई यस धर्तीको खलीफा

قَالُوْۤا اُوْذِيْنَا مِنْ قَبْلِ اَنْ تَاْتِيَنَا وَمِنْ بَعْدِ مَا جِئْتَنَا ؕ قَالَ عَسٰى رَبُّكُمْ اَنْ يُّهْلِكَ عَدُوَّكُمْ وَيَسْتَخْلِفَكُمْ فِى الْاَرْضِ فَيَنْظُرَ كَيْفَ تَعْمَلُوْنَ ﴿۱۲۹﴾

(उत्तराधिकारी) बनाइदिनेछ, र हेर्नेछ कि तिम्रो व्यवहार कस्तो हुन्छ ।''

وَلَقَدْ أَخَذْنَآ ءَالَ فِرْعَوْنَ بِٱلسِّنِينَ وَنَقْصٍ مِّنَ ٱلثَّمَرَٰتِ لَعَلَّهُمْ يَذَّكَّرُونَ ﴿١٣٠﴾

१३०) र हामीले फिर्औनीहरूलाई (केही समयसम्मका लागि) फलहरूको उत्पादनमा कमि गऱ्यौ र अनिकाल ल्यायौं, जसबाट उनीहरूले चेतुन् ।

فَإِذَا جَآءَتْهُمُ ٱلْحَسَنَةُ قَالُوا۟ لَنَا هَٰذِهِۦ ۖ وَإِن تُصِبْهُمْ سَيِّئَةٌ يَطَّيَّرُوا۟ بِمُوسَىٰ وَمَن مَّعَهُۥٓ ۗ أَلَآ إِنَّمَا طَٰٓئِرُهُمْ عِندَ ٱللَّهِ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿١٣١﴾

१३१) तसर्थ जब तिनीहरूलाई सुख प्राप्त हुन्थ्यो त भन्थे कि हामी यसका हकदार हौं र कष्ट आइपर्दा मूसा(अलै.) र उनका साथीहरूलाई अलच्छिन् भन्थे । याद राख तिनीहरूको अलच्छिन्पना अल्लाहको पासमा छ, र उनीहरूमध्ये अधिकांश जान्दैनन् ।

وَقَالُوا۟ مَهْمَا تَأْتِنَا بِهِۦ مِنْ ءَايَةٍ لِّتَسْحَرَنَا بِهَا فَمَا نَحْنُ لَكَ بِمُؤْمِنِينَ ﴿١٣٢﴾

१३२) र उनीहरूले भन्दथे, "तिमी हामीमाथि जादू गर्न जुनसुकै निशानी हाम्रो सामु ल्याए पनि, हामी तिमीमाथि विश्वास गर्नेवाला छैनौं ।

فَأَرْسَلْنَا عَلَيْهِمُ ٱلطُّوفَانَ وَٱلْجَرَادَ وَٱلْقُمَّلَ وَٱلضَّفَادِعَ وَٱلدَّمَ ءَايَٰتٍ مُّفَصَّلَٰتٍ فَٱسْتَكْبَرُوا۟ وَكَانُوا۟ قَوْمًا مُّجْرِمِينَ ﴿١٣٣﴾

१३३) अन्ततः हामीले तिनीहरूमाथि हुरी, शलह, घुनको कीरा, भ्यागुता र रगत, यी सबै खुल्ला चमत्कारका निशानीहरू पठायौं तर तिनीहरूले घमण्ड नै गरिराखे र तिनीहरू अपराधी नै थिए ।

وَلَمَّا وَقَعَ عَلَيْهِمُ ٱلرِّجْزُ قَالُوا۟ يَٰمُوسَى ٱدْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِندَكَ ۖ لَئِن كَشَفْتَ عَنَّا ٱلرِّجْزَ لَنُؤْمِنَنَّ لَكَ وَلَنُرْسِلَنَّ مَعَكَ بَنِىٓ إِسْرَٰٓءِيلَ ﴿١٣٤﴾

१३४) र जब उनीहरूमाथि कुनै कष्ट हुन्थ्यो तब यस्तो भन्थे, "हे मूसा(अलै.) ! हाम्रो निम्ति आफ्नो पालनकर्तासित त्यस प्रतिज्ञाको आधारमा प्रार्थना गर्नुस् जुन उसले तपाईंसित गरेको

छ, यदि तपाईले हामीलाई यस सजायबाट मुक्त गराइदिनु हुन्छ भने हामीले अवश्य नै तपाईले भने बमोजिम ईमान ल्याउनेछौं र इस्राईलका सन्तानलाई (छुटकारा दिएर) तपाईको साथमा जान दिनेछौं ।

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الرِّجْزَ إِلَىٰٓ أَجَلٍ هُم بَٰلِغُوهُ إِذَا هُمْ يَنكُثُونَ ﴿١٣٥﴾

१३५) फेरि जब हामीले उनीहरूबाट त्यस यातनालाई एक विशेष समयसम्म जहाँसम्म उनीहरूलाई पुग्नु थियो, हटाइदिन्थ्यौं, तब तिनीहरू तुरुन्तै आफ्नो वाचा भङ्ग गरिहाल्थे ।

فَٱنتَقَمْنَا مِنْهُمْ فَأَغْرَقْنَٰهُمْ فِى ٱلْيَمِّ بِأَنَّهُمْ كَذَّبُوا۟ بِـَٔايَٰتِنَا وَكَانُوا۟ عَنْهَا غَٰفِلِينَ ﴿١٣٦﴾

१३६) अनि हामीले उनीहरूसित बदला लियौं अर्थात उनीहरूलाई समुद्रमा डुबाइदियौं, यसकारण कि उनीहरूले हाम्रा निशानीहरूलाई झूठा भन्दथे र त्यसप्रति बिल्कुलै लापरवाही गर्दथे ।

وَأَوْرَثْنَا ٱلْقَوْمَ ٱلَّذِينَ كَانُوا۟ يُسْتَضْعَفُونَ مَشَٰرِقَ ٱلْأَرْضِ وَمَغَٰرِبَهَا ٱلَّتِى بَٰرَكْنَا فِيهَا ۖ وَتَمَّتْ كَلِمَتُ رَبِّكَ ٱلْحُسْنَىٰ عَلَىٰ بَنِىٓ إِسْرَٰٓءِيلَ بِمَا صَبَرُوا۟ ۖ وَدَمَّرْنَا مَا كَانَ يَصْنَعُ فِرْعَوْنُ وَقَوْمُهُۥ وَمَا كَانُوا۟ يَعْرِشُونَ ﴿١٣٧﴾

१३७) र हामीले उनीहरूलाई, जो निकै कम्जोर गनिन्थे, त्यस भू-भागको पूर्व-पश्चिमको मालिक बनाइदियौं, जसमा हामीले बरकत राखेका छौं र तिम्रो पालनकर्ताको राम्रो वाचा इस्राईलको सन्तानको हकमा पूरा भयो किनभने उनीहरूले धैर्यसित काम लिए र फिरऔनको र उसको जातिका मानिसहरू जसले कि ठूला-अग्ला कारखाना महलहरू बनाएका थिए, सबै हामीले नष्ट पारिदियौं ।

وَجٰوَزۡنَا بِبَنِیۡۤ اِسۡرَآءِیۡلَ الۡبَحۡرَ فَاَتَوۡا عَلٰی قَوۡمٍ یَّعۡکُفُوۡنَ عَلٰۤی اَصۡنَامٍ لَّهُمۡ ۚ قَالُوۡا یٰمُوۡسَی اجۡعَلۡ لَّنَاۤ اِلٰـهًا کَمَا لَهُمۡ اٰلِـهَةٌ ؕ قَالَ اِنَّکُمۡ قَوۡمٌ تَجۡهَلُوۡنَ ﴿۱۳۸﴾

१३८) र हामीले बनी इस्राईललाई समुद्रबाट पार गऱ्यौं । अनि तिनीहरू यस्ता मानिसहरूका समीपमा पुगे जुनकि आफ्ना केही देवताहरू छेउ बसेका थिए, भन्नथाले : "हे मूसा ! हाम्रा निम्ति पनि यस्तै एउटा देवता नियुक्त गरिदिनुस् जस्तो कि यिनीहरूका यी देवताहरू छन्" । उनले भने कि साँच्चै नै तिमीहरूमा ठूलो अज्ञानता छ ।

اِنَّ هٰۤؤُلَآءِ مُتَبَّرٌ مَّا هُمۡ فِیۡهِ وَ بٰطِلٌ مَّا کَانُوۡا یَعۡمَلُوۡنَ ﴿۱۳۹﴾

१३९) यी मानिसहरू जुन काममा लागेका छन्, त्यो निश्चय नै ध्वस्त गरिनेछ र यिनीहरूको यो काम निराधार छ ।

قَالَ اَغَیۡرَ اللّٰهِ اَبۡغِیۡکُمۡ اِلٰـهًا وَّ هُوَ فَضَّلَکُمۡ عَلَی الۡعٰلَمِیۡنَ ﴿۱۴۰﴾

१४०) उनले भने कि के अल्लाह बाहेक अरु कसैलाई तिम्रो उपास्य निर्धारित गरूँ, जबकि उसैले सबै संसारवालामाथि तिमीलाई श्रेष्ठता प्रदान गरेको छ ?

وَ اِذۡ اَنۡجَیۡنٰکُمۡ مِّنۡ اٰلِ فِرۡعَوۡنَ یَسُوۡمُوۡنَکُمۡ سُوۡٓءَ الۡعَذَابِ ۚ یُقَتِّلُوۡنَ اَبۡنَآءَکُمۡ وَ یَسۡتَحۡیُوۡنَ نِسَآءَکُمۡ ؕ وَ فِیۡ ذٰلِکُمۡ بَلَآءٌ مِّنۡ رَّبِّکُمۡ عَظِیۡمٌ ﴿۱۴۱﴾

१४१) र त्यो समय यादगर जब हामीले तिमीलाई फिरऔनका मानिसहरूबाट छुटकारा दियौं । जसले तिमीलाई गम्भीर यातना दिन्थे । तिम्रा छोराहरूलाई मारिदिन्थे र तिम्रा स्त्रीहरूलाई जीवित रहन दिन्थे । र त्यसमा तिम्रो पालनकर्ताबाट ठूलो परीक्षा थियो ।

وَ وٰعَدۡنَا مُوۡسٰی ثَلٰثِیۡنَ لَیۡلَةً وَّ اَتۡمَمۡنٰهَا بِعَشۡرٍ فَتَمَّ مِیۡقَاتُ رَبِّهٖۤ اَرۡبَعِیۡنَ لَیۡلَةً ۚ وَ قَالَ مُوۡسٰی لِاَخِیۡهِ هٰرُوۡنَ اخۡلُفۡنِیۡ فِیۡ

१४२) र हामीले मूसा(अलै.) सित ३० रातको वचन दियौं अनि हामीले १० रात अतिरिक्त बढाएर पुरा गऱ्यौं ।

قَوْمِيْ وَأَصْلِحْ وَلَا تَتَّبِعْ سَبِيْلَ الْمُفْسِدِيْنَ ﴿١٤٢﴾

यसप्रकार उनको पालनकर्ताको समय ४० रात भइहाल्यो । र मूसा(अलै.)ले आफ्ना भाइ हारूनसित भने, "मेरो पछाडी यिनीहरूको व्यवस्था मिलाउनु र सुधार गर्दैरहनु र अव्यवस्था उत्पन्न गर्नेवालाहरूको मार्गमा नहिंड्नु ।"

وَلَمَّا جَآءَ مُوْسٰى لِمِيْقَاتِنَا وَكَلَّمَهٗ رَبُّهٗ ۙ قَالَ رَبِّ اَرِنِيْٓ اَنْظُرْ اِلَيْكَ ؕ قَالَ لَنْ تَرٰىنِيْ وَلٰكِنِ انْظُرْ اِلَى الْجَبَلِ فَاِنِ اسْتَقَرَّ مَكَانَهٗ فَسَوْفَ تَرٰىنِيْ ۚ فَلَمَّا تَجَلّٰى رَبُّهٗ لِلْجَبَلِ جَعَلَهٗ دَكًّا وَّخَرَّ مُوْسٰى صَعِقًا ۚ فَلَمَّآ اَفَاقَ قَالَ سُبْحٰنَكَ تُبْتُ اِلَيْكَ وَاَنَا اَوَّلُ الْمُؤْمِنِيْنَ ﴿١٤٣﴾

१४३) र जब मूसा (अलै.), हामीले निर्धारित गरेको समयमा आए र उनको पालनकर्ताले उनीसित कुरा गऱ्यो त उनले विन्ति गरे कि हे मेरो पालनकर्ता ! मलाई आफ्नो साक्षात्कार गराउनुस् ताकि म तपाईलाई एक दृष्टि हेरिहालूँ । अल्लाहले भन्नुभयो : तिमीले मलाई कदापी हेर्न सक्दैनौ तर तिमी त्यस पर्वततिर हेर्दैगर, यदि त्यो आफ्नो ठाँउमा स्थिर रह्यो भने तिमीले मलाई हेर्न सक्नेछौ । अनि जब उनको रब पर्वतमाथी आफ्नो प्रकाश हाल्यो त प्रकाशले त्यसलाई चकनाचूर (क्षतविक्षत) गरिदियो र मूसा (अलैहिस्सलाम) मूर्क्षित भई लडिहाले । अनि जब होशमा आए त भने, "पवित्रछौं तिमी!" म तिम्रो समक्ष तौबा (पश्चाताप) गर्दैछु र म सबभन्दा पहिले तपाईमाथि ईमान ल्याउने भएको छु ।

قَالَ يٰمُوْسٰٓى اِنِّي اصْطَفَيْتُكَ عَلَى النَّاسِ

१४४) (अल्लाहले) भन्नुभयो: हे मूसा

بِرِسٰلٰتِيْ وَبِكَلَامِيْ ۖ فَخُذْ مَآ اٰتَيْتُكَ وَكُنْ مِّنَ الشّٰكِرِيْنَ ﴿١٤٤﴾

(अलै.) ! मैले पैगम्बरी र आफ्नो वाणीबाट तिमीलाई अरु मानिसहरू भन्दा विशिष्ट बनाएको छु । अतः जे मैले तिमीलाई प्रदान गरेको छु, त्यसलाई लिई हाल र कृतज्ञता प्रकट गर ।

وَكَتَبْنَا لَهٗ فِى الْاَلْوَاحِ مِنْ كُلِّ شَيْءٍ مَّوْعِظَةً وَّتَفْصِيْلًا لِّكُلِّ شَيْءٍ ۚ فَخُذْهَا بِقُوَّةٍ وَّاْمُرْ قَوْمَكَ يَاْخُذُوْا بِاَحْسَنِهَا ۗ سَاُورِيْكُمْ دَارَ الْفٰسِقِيْنَ ﴿١٤٥﴾

१४५) र हामीले पाटीहरूमा हरेक प्रकारको उपदेश र हरेक कुराको विस्तृत वर्णन लेखि उनलाई दियौं । अतः तिमीले तिनलाई दृढतापूर्वक समातिहाल र आफ्नो जातिलाई आदेश गर कि तिनमा उत्तम कुराहरूछन्, तिनीहरूले त्यसलाई अपनाऊन् । अब छिटै नै तिमीहरूलाई ती अवज्ञाकारीहरूको ठाउँ देखाउनेछु ।

سَاَصْرِفُ عَنْ اٰيٰتِيَ الَّذِيْنَ يَتَكَبَّرُوْنَ فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ ۗ وَاِنْ يَّرَوْا كُلَّ اٰيَةٍ لَّا يُؤْمِنُوْا بِهَا ۚ وَاِنْ يَّرَوْا سَبِيْلَ الرُّشْدِ لَا يَتَّخِذُوْهُ سَبِيْلًا ۚ وَاِنْ يَّرَوْا سَبِيْلَ الْغَيِّ يَتَّخِذُوْهُ سَبِيْلًا ۗ ذٰلِكَ بِاَنَّهُمْ كَذَّبُوْا بِاٰيٰتِنَا وَكَانُوْا عَنْهَا غٰفِلِيْنَ ﴿١٤٦﴾

१४६) म यस्ता मानिसहरूलाई आफ्ना निशानीहरूबाट विमुख नै राख्नेछु जो पृथ्वीमा घमण्ड गर्दछन्, जसको तिनीलाई कुनै अधिकार छैन र यदि तमाम निशानीहरू देखिहाले तापनि तिनीहरू त्यसमा विश्वास गर्ने छैनन् र यदि सोझो बाटो देख्छन् भने पनि त्यसलाई आफ्नो बाटो मान्ने छैनन् र यदि पथ भ्रष्टका बाटो देख्छन् भने त्यसलाई अप्नाउने छन् । यो यसकारणले हो कि उनीहरूले हाम्रा आयतहरूलाई झूठो भने र त्यस प्रति असावधान रहे ।

وَالَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِنَا وَلِقَآءِ الْاٰخِرَةِ حَبِطَتْ اَعْمَالُهُمْ ؕ هَلْ يُجْزَوْنَ اِلَّا مَا كَانُوْا يَعْمَلُوْنَ ﴿١٤٧﴾

१४७) र यी मानिसहरू जसले हाम्रा आयतहरूलाई र प्रलोकको आउने कुरालाई झूठा ठाने, उनीहरूको सबै कर्म नष्ट भए, उनीहरूले त्यही सजाय पाउने छन् जस्तो उनीहरूले गर्दथे ।

وَاتَّخَذَ قَوْمُ مُوْسٰى مِنْۢ بَعْدِهٖ مِنْ حُلِيِّهِمْ عِجْلًا جَسَدًا لَّهٗ خُوَارٌ ؕ اَلَمْ يَرَوْا اَنَّهٗ لَا يُكَلِّمُهُمْ وَلَا يَهْدِيْهِمْ سَبِيْلًا ۘ اِتَّخَذُوْهُ وَكَانُوْا ظٰلِمِيْنَ ﴿١٤٨﴾

१४८) र मूसा(अलै.)को जातिले उनको अनुपस्थितिमा आफ्ना गहनाहरूको एउटा बाछोलाई पूज्य ठहराए जो एउटा ढाँचामात्र थियो । जसमा एउटा आवाज थियो । के उनीहरूले यो देखेनन् कि त्यसले उनीहरूसित न कुनै कुरा गर्थ्यो र न उनलाई कुनै बाटो देखाउन्थ्यो, त्यसलाई यिनीहरूले पूजनीय ठाने र ठूलो अन्यायको काम गरे ।

وَلَمَّا سُقِطَ فِيْۤ اَيْدِيْهِمْ وَرَاَوْا اَنَّهُمْ قَدْ ضَلُّوْا ۙ قَالُوْا لَئِنْ لَّمْ يَرْحَمْنَا رَبُّنَا وَيَغْفِرْ لَنَا لَنَكُوْنَنَّ مِنَ الْخٰسِرِيْنَ ﴿١٤٩﴾

१४९) र जब तिनी लज्जित भए र थाहा भयो कि वास्तवमा उनीहरूमार्ग-विचलनमा परिहाले छन् तब भन्न थाले कि यदि हाम्रो रबले हामीमाथि दया गरेन र हामीलाई क्षमा गरेन भने हामी बर्बाद भइहाल्नेछौं ।

وَلَمَّا رَجَعَ مُوْسٰۤى اِلٰى قَوْمِهٖ غَضْبَانَ اَسِفًا ۙ قَالَ بِئْسَمَا خَلَفْتُمُوْنِيْ مِنْۢ بَعْدِيْ ۚ اَعَجِلْتُمْ اَمْرَ رَبِّكُمْ ۚ وَاَلْقَى الْاَلْوَاحَ وَاَخَذَ بِرَاْسِ اَخِيْهِ يَجُرُّهٗۤ اِلَيْهِ ؕ قَالَ ابْنَ اُمَّ اِنَّ الْقَوْمَ اسْتَضْعَفُوْنِيْ وَكَادُوْا يَقْتُلُوْنَنِيْ ۖؗ فَلَا تُشْمِتْ بِيَ الْاَعْدَآءَ وَلَا تَجْعَلْنِيْ مَعَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿١٥٠﴾

१५०) र जब मूसा(अलै.) आफ्नो जातितिर रिस र दुःखको अवस्थामा फर्केर आए त भन्न थाले: "तिमीहरूले मेरो अनुपस्थितिमा साह्रै नराम्रो काम गर्‍यौ । के तिमीहरूले आफ्नो पालनहारको आदेश भन्दा पहिले नै हतार गरिहाल्यौ ?" अनि छिटै

पाटीहरू एकातिर राखे र आफ्नो भाइको टाउको समाति आफूतिर घिसारेर तान्नथाले । हारून(अलै.) ले भने कि हे मेरी आमाको छोरा ! यिनीहरूले मलाई कमजोर ठानेर भण्डै मारिदिन चाहन्थे । तसर्थ तपाई शत्रुहरूबाट म माथि उपहास नगराउनुस् र मलाई यी अत्याचारीहरू मध्येको नठान्नु ।

قَالَ رَبِّ اغْفِرْ لِي وَلِأَخِي وَأَدْخِلْنَا فِي رَحْمَتِكَ ۖ وَأَنتَ أَرْحَمُ الرَّاحِمِينَ ﴿١٥١﴾

१५१) मूसा(अलै.)ले भने: कि हे मेरो पालनकर्ता ! मलाई र मेरो भाइलाई क्षमा गरिदेऊ र हामी दुवैलाई आफ्नो दयामा शम्मिलित गर र तिमी सबै दया गर्नेवालाहरूमध्ये सबैभन्दा बढी दयावान् छौ ।

إِنَّ الَّذِينَ اتَّخَذُوا الْعِجْلَ سَيَنَالُهُمْ غَضَبٌ مِّن رَّبِّهِمْ وَذِلَّةٌ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَكَذَٰلِكَ نَجْزِي الْمُفْتَرِينَ ﴿١٥٢﴾

१५२) नि:सन्देह जुन मानिसहरूले बाछोलाई आफ्नो उपास्य बनाए ती छिटै आफ्नो रबको रिसमा पर्नेछन् र सांसारिक जीवनमा अपमानित हुनेछन् । र झूठा कुरा बनाउनेहरूलाई हामीले त्यस्तै प्रतिफल दिने गर्दछौं ।

وَالَّذِينَ عَمِلُوا السَّيِّئَاتِ ثُمَّ تَابُوا مِن بَعْدِهَا وَآمَنُوا إِنَّ رَبَّكَ مِن بَعْدِهَا لَغَفُورٌ رَّحِيمٌ ﴿١٥٣﴾

१५३) र जुन मानिसहरूले पाप कर्म गरे, अनि त्यसपछि पश्चाताप गरे र ईमान ल्याए, त तिम्रो पालनकर्ताले यस पश्चाताप पश्चात क्षमा गरिदिन्छ ऊ दयावान छ ।

وَلَمَّا سَكَتَ عَن مُّوسَى الْغَضَبُ أَخَذَ الْأَلْوَاحَ ۖ وَفِي نُسْخَتِهَا هُدًى وَرَحْمَةٌ لِّلَّذِينَ هُمْ لِرَبِّهِمْ يَرْهَبُونَ ﴿١٥٤﴾

१५४) र जब मूसाको क्रोध शान्त भयो तब ती पाटीहरूलाई समाते तिनको शीर्षकहरूमा ती मानिसहरूको

निम्ति मार्गदर्शन र दया थियो जो आफ्नो रबसंग डर मान्दथे ।

१५५) र मूसा(अलै.)ले आफ्नो कौममध्ये सत्तरी मानिसहरूलाई हामीले निर्धारित गरेको समयको लागि रोजे । अनि जब उनीहरूलाई एउटा भुकम्पले समात्यो तब मूसा (अलै.) विन्ति गर्नथाले: हे मेरो पालनकर्ता ! यदि तिमीले चाहेको भए पहिले नै यिनीहरूलाई र मलाई नष्ट गरिदिन्थ्यौ । के तिमीले हामीमध्येका केही मूर्खहरूको क्रियाकलापले गर्दा हामी सबैलाई नष्ट गरिदिनेछौ । यो घटना त तिम्रो तर्फबाट मात्र एउटा परीक्षा हो । यस्ता परीक्षाहरूबाट जसलाई तिमी चाहन्छौ, पथभ्रष्ट गर र जसलाई चाहन्छौ असल बाटोमा कायम राख । तिमी नै हाम्रो संरक्षक छौ । अतः तिमी हमीलाई क्षमा र हामीमाथि दया गर र तिमी सबैभन्दा ठूलो क्षमादाता हौ ।

وَاخْتَارَ مُوسٰى قَوْمَهٗ سَبْعِيْنَ رَجُلًا لِّمِيْقَاتِنَا ۚ فَلَمَّآ اَخَذَتْهُمُ الرَّجْفَةُ قَالَ رَبِّ لَوْ شِئْتَ اَهْلَكْتَهُمْ مِّنْ قَبْلُ وَاِيَّايَ ۭ اَتُهْلِكُنَا بِمَا فَعَلَ السُّفَهَاۗءُ مِنَّا ۚ اِنْ هِيَ اِلَّا فِتْنَتُكَ ۭ تُضِلُّ بِهَا مَنْ تَشَاۗءُ وَتَهْدِيْ مَنْ تَشَاۗءُ ۭ اَنْتَ وَلِيُّنَا فَاغْفِرْ لَنَا وَارْحَمْنَا وَاَنْتَ خَيْرُ الْغٰفِرِيْنَ ﴿١٥٥﴾

१५६) र हाम्रो निम्ति संसारमा पनि भलो लेखिदेऊ र आखिरत (परलोक)मा पनि, हामी तिमीतिर उन्मुख हुन्छौ । अल्लाहले भन्यो म आफ्नो यातनाले उसैलाई ग्रस्त गर्छु, जसलाई चाहन्छु तर मेरो दयालुताबाट सबैकुरा अच्छादित छन् । र त्यो दया ती मानिसहरूको नाममा अवश्य लेख्नेछु जो अल्लाहसित डरछन् र जकात

وَاكْتُبْ لَنَا فِيْ هٰذِهِ الدُّنْيَا حَسَنَةً وَّفِي الْاٰخِرَةِ اِنَّا هُدْنَآ اِلَيْكَ ۭ قَالَ عَذَابِيْٓ اُصِيْبُ بِهٖ مَنْ اَشَاۗءُ ۚ وَرَحْمَتِيْ وَسِعَتْ كُلَّ شَيْءٍ ۭ فَسَاَكْتُبُهَا لِلَّذِيْنَ يَتَّقُوْنَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَالَّذِيْنَ هُمْ بِاٰيٰتِنَا يُؤْمِنُوْنَ ﴿١٥٦﴾

(दान) दिन्छन् र जो हाम्रा आयतमाथि ईमान ल्याउँछन् ।

الَّذِينَ يَتَّبِعُونَ الرَّسُولَ النَّبِيَّ الْأُمِّيَّ الَّذِي يَجِدُونَهُ مَكْتُوبًا عِندَهُمْ فِي التَّوْرَاةِ وَالْإِنجِيلِ يَأْمُرُهُم بِالْمَعْرُوفِ وَيَنْهَاهُمْ عَنِ الْمُنكَرِ وَيُحِلُّ لَهُمُ الطَّيِّبَاتِ وَيُحَرِّمُ عَلَيْهِمُ الْخَبَائِثَ وَيَضَعُ عَنْهُمْ إِصْرَهُمْ وَالْأَغْلَالَ الَّتِي كَانَتْ عَلَيْهِمْ ۚ فَالَّذِينَ آمَنُوا بِهِ وَعَزَّرُوهُ وَنَصَرُوهُ وَاتَّبَعُوا النُّورَ الَّذِي أُنزِلَ مَعَهُ ۙ أُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿١٥٧﴾

१५७) जुन मानिसहरूले यस्ता रसूल, नबी उम्मी (निरक्षर) को अनुशरण गर्छन्, जसलाई उनीहरूले आफुकहाँ तौरात र इन्जीलमा लेखिएको पाउँछन् । उनले उनीहरूलाई असल कुराको आदेश गर्दछन् र नराम्रा कुराहरूबाट मनाही गर्दछन् र स्वच्छ कुरालाई हलाल (स्वीकार्य) बताउँछन् र अपवित्र कुरालाई हराम (वर्जित) बताउँछन् र तिनीहरूमाथिबाट त्यो बोझ उतार्दछन् जुन अहिलेसम्म उनीहरूमाथि लादिएका थिए बन्धनहरूलाई फुक्का गर्दछन् जसमा उनीहरू जकडिएका थिए । अत : जो मानिसहरू त्यस नबीमा विश्वास गर्दछन् र उनको समर्थन गर्दछन् र उनको सहायता गर्दछन्, र त्यस प्रकाशलाई मान्दछन् जो उनको साथमा पठाइएको छ । यस्ता मानिसहरू पूर्ण सफलता प्राप्त गर्नेवाला छन् ।

قُلْ يَا أَيُّهَا النَّاسُ إِنِّي رَسُولُ اللَّهِ إِلَيْكُمْ جَمِيعًا الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ لَا إِلَٰهَ إِلَّا هُوَ يُحْيِي وَيُمِيتُ ۖ فَآمِنُوا بِاللَّهِ وَرَسُولِهِ النَّبِيِّ الْأُمِّيِّ الَّذِي يُؤْمِنُ بِاللَّهِ وَكَلِمَاتِهِ وَاتَّبِعُوهُ لَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٥٨﴾

१५८) तपाईले भनिदिनुस् : "हे मानिसहरू! म तिमीहरू सबैको लागि त्यस अल्लाहबाट पठाइएको रसूल हुँ जो आकाशहरू र धर्तीको राज्यको स्वामी छ । उस बाहेक कोही सत्य पूज्य छैन, उसैले जीवन प्रदान गर्दछ र उसैले प्राण लिन्छ । तसर्थ

अल्लाह माथि ईमान ल्याऊ र उसका नबी उम्मीमा, जो स्वयं अल्लाह तआला र उसका आदेशमा आस्था राख्दछन् । उनको अनुशरण गर ताकि तिमी (सही) मार्ग पाउन सक ।''

وَمِنْ قَوْمِ مُوسَىٰٓ أُمَّةٌ يَهْدُونَ بِالْحَقِّ وَبِهِۦ يَعْدِلُونَ ﴿١٥٩﴾

१५९) मूसा (अ.) को जातिमा एउटा समूह यस्तो पनि छ, जसले सत्य मार्ग देखाउँदछ, र त्यसै अनुरूप न्याय गर्दछ ।

وَقَطَّعْنَٰهُمُ ٱثْنَتَىْ عَشْرَةَ أَسْبَاطًا أُمَمًا ۚ وَأَوْحَيْنَآ إِلَىٰ مُوسَىٰٓ إِذِ ٱسْتَسْقَىٰهُ قَوْمُهُۥٓ أَنِ ٱضْرِب بِّعَصَاكَ ٱلْحَجَرَ ۖ فَٱنۢبَجَسَتْ مِنْهُ ٱثْنَتَا عَشْرَةَ عَيْنًا ۖ قَدْ عَلِمَ كُلُّ أُنَاسٍ مَّشْرَبَهُمْ ۚ وَظَلَّلْنَا عَلَيْهِمُ ٱلْغَمَٰمَ وَأَنزَلْنَا عَلَيْهِمُ ٱلْمَنَّ وَٱلسَّلْوَىٰ ۖ كُلُوا۟ مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ ۚ وَمَا ظَلَمُونَا وَلَٰكِن كَانُوٓا۟ أَنفُسَهُمْ يَظْلِمُونَ ﴿١٦٠﴾

१६०) र हामीले उनलाई बाह्र घरानाहरूमा विभक्त गरी, सबैको बेग्ला-बेग्लै समूह निश्चित गरिदियौं । जब उनका कौमका मानिसहरूले पानी मांगे, तब हामीले मूसा (अ.)लाई आदेश गर्‍यौं: "आफ्नो लठ्ठीले एउटा खास चट्टानमा प्रहार गर । अत: तुरुन्तै त्यसबाट बाह्र मूल फुटे र हरेक समूहले आफ्नो मूल थाहा पाइहाले । र हामीले उनीमाथि बादलको छायाँ गर्‍यौं, र उनीमाथि "मन्न'' र "सलवा'' उतार्‍यौं : हामीले तिमीलाई जे राम्रो कुरा प्रदान् गरेका छौं, त्यसलाई खाऊ'' र उनीहरूले हाम्रो कुनै हानि गरेनन् बरु आफ्नै हानि गर्दथे ।

وَإِذْ قِيلَ لَهُمُ ٱسْكُنُوا۟ هَٰذِهِ ٱلْقَرْيَةَ وَكُلُوا۟ مِنْهَا حَيْثُ شِئْتُمْ وَقُولُوا۟ حِطَّةٌ وَٱدْخُلُوا۟ ٱلْبَابَ سُجَّدًا نَّغْفِرْ لَكُمْ خَطِيٓـَٰٔتِكُمْ ۚ سَنَزِيدُ ٱلْمُحْسِنِينَ ﴿١٦١﴾

१६१) र यादगर जब हामीले उनलाई आदेश दियौं कि तिमीहरू त्यस बस्तीमा गई बस र यसमा जहाँबाट चाहन्छौ खाऊ, र मुखले भन्दै

जानु-कि तौबा (पश्चाताप) छ र ढोकामा निहुरिएर प्रवेश गर, हामीले तिम्रा त्रुटिहरूलाई क्षमा गरिदिनेछौं, र हामीले सुकर्मीहरूलाई बढी पनि दिनेछौं ।

१६२) तर अत्याचारीहरूले, जुन कुरा (कलमा) उनीहरूसित भनिएको थियो, त्यसलाई त्यसभन्दा भिन्न कुरामा बदलिदिए । अत : जुन अत्याचार उनीहरूले गरेका थिए त्यसको कारण र आदेश नष्ट गरेकाले हामीले आकाशबाट तिनीहरूमाथि एउटा यातना पठायौं ।

فَبَدَّلَ الَّذِينَ ظَلَمُوا مِنْهُمْ قَوْلًا غَيْرَ الَّذِي قِيلَ لَهُمْ فَأَرْسَلْنَا عَلَيْهِمْ رِجْزًا مِّنَ السَّمَاءِ بِمَا كَانُوا يَظْلِمُونَ ﴿١٦٢﴾

१६३) तपाईले उनीहरूसित त्यस बस्तीको विषयमा सोध्नुस्, जो सागरतट्मा अवस्थित थियो र जब तिनीहरूले "साताको" बारेमा सीमा उल्लघंन गर्दथे, जब उनका साताको दिन तिनका माछाहरू खुल्लारूपमा तिनीहरू समक्ष पानीको सतहमाथि आउन्थे, र जब उनको साताको दिन हुँदैनथ्यो तब तिनीहरू उनको सामुन्ने आउँदैनथे । यसप्रकार हामीले उनलाई अवज्ञाकारी भएको कारणले परीक्षामा पार्दथ्यौं ।

وَسْئَلْهُمْ عَنِ الْقَرْيَةِ الَّتِي كَانَتْ حَاضِرَةَ الْبَحْرِ إِذْ يَعْدُونَ فِي السَّبْتِ إِذْ تَأْتِيهِمْ حِيتَانُهُمْ يَوْمَ سَبْتِهِمْ شُرَّعًا وَيَوْمَ لَا يَسْبِتُونَ لَا تَأْتِيهِمْ كَذَٰلِكَ نَبْلُوهُم بِمَا كَانُوا يَفْسُقُونَ ﴿١٦٣﴾

१६४) र जब तिनीहरूको एक समूहले यस्तो भन्यो: कि "तिमी यस्ता मानिसहरूलाई किन उपदेश दिन्छौ, जसलाई अल्लाह नष्ट गर्नेवाला छ,

وَإِذْ قَالَتْ أُمَّةٌ مِّنْهُمْ لِمَ تَعِظُونَ قَوْمًا اللَّهُ مُهْلِكُهُمْ أَوْ مُعَذِّبُهُمْ عَذَابًا شَدِيدًا قَالُوا مَعْذِرَةً إِلَىٰ رَبِّكُمْ وَلَعَلَّهُمْ يَتَّقُونَ ﴿١٦٤﴾

वा जसलाई कठोर यातना दिनेवाला छ ?'' उनले भने : "तिम्रो पालनकर्ता समक्ष आफूलाई निरपराध सिद्ध गर्नको निम्ति, र यसकारण कि कदाचित यिनीहरू डर मानुन् ।''

१६५) अनि जब तिनीहरूले त्यो कुरा बिर्सिहाले जुन कुरा उनलाई सम्झाइएको थियो, त हामीले उनीहरूलाई त बचाइहाल्यौं जसले नराम्रो कुराबाट रोक्दथे, र अत्याचारीहरूलाई उनको अवज्ञाको कारणले कठोर यातनामा जकडिहाल्यौं ।

فَلَمَّا نَسُوا مَا ذُكِّرُوا بِهِۦٓ أَنجَيْنَا ٱلَّذِينَ يَنْهَوْنَ عَنِ ٱلسُّوٓءِ وَأَخَذْنَا ٱلَّذِينَ ظَلَمُوا۟ بِعَذَابٍۭ بَـِٔيسٍۭ بِمَا كَانُوا۟ يَفْسُقُونَ ﴿١٦٥﴾

१६६) अर्थात जब उनीहरू त्यसमा सीमा उल्लघंन गरे, जुन कुराबाट उनीहरूलाई मनाही गरिएको थियो, त हामीले उनीहरूसित भन्यौं, तिमी अपमानित र तिरस्कृत बाँदर भइहाल ।''

فَلَمَّا عَتَوْا۟ عَن مَّا نُهُوا۟ عَنْهُ قُلْنَا لَهُمْ كُونُوا۟ قِرَدَةً خَـٰسِـِٔينَ ﴿١٦٦﴾

१६७) र त्यो समय स्मरण गर्नु योग्यछ जबकि तपाईको पालनकर्ताले यो कुरा भन्यो: कि उसले यी यहूदीहरूमाथि कियामतसम्म यस्तो व्यक्तिलाई अवश्य नियुक्त गरिराख्ने छ, जसले उनीहरूलाई दुखद् सजाय दिई रहनेछ । निःसन्देह तिम्रो पालनहार छिटै सजाय दिइहाल्छ । र अवश्य ऊ बडो क्षमाशील, अत्यन्त दयावान छ ।

وَإِذْ تَأَذَّنَ رَبُّكَ لَيَبْعَثَنَّ عَلَيْهِمْ إِلَىٰ يَوْمِ ٱلْقِيَـٰمَةِ مَن يَسُومُهُمْ سُوٓءَ ٱلْعَذَابِ ۗ إِنَّ رَبَّكَ لَسَرِيعُ ٱلْعِقَابِ ۖ وَإِنَّهُۥ لَغَفُورٌ رَّحِيمٌ ﴿١٦٧﴾

१६८) र हामीले पृथ्वीमा तिनीहरूलाई विभिन्न वर्गमा विभाजित गरी फिँजाइदियौं । यिनीमध्ये केही राम्रो काम गर्नेवाला (नेक) थिए र केही भिन्न प्रकारका, र हामीले दुःख र सुख दुवैबाट तिनीहरूको परीक्षा लिदैं गरें ताकि तिनीहरू खराब कामबाट अलग होऊन् ।

وَقَطَّعْنٰهُمْ فِى الْاَرْضِ اُمَمًا ۚ مِنْهُمُ الصّٰلِحُوْنَ وَمِنْهُمْ دُوْنَ ذٰلِكَ ۖ وَبَلَوْنٰهُمْ بِالْحَسَنٰتِ وَالسَّيِّاٰتِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿١٦٨﴾

१६९) अनि उनीहरूपछि यस्ता मानिसहरू उनीहरूको ठाउँ ओगटे, जो किताबका उत्तराधिकारी भई यस संसारको सम्पत्ति लिन्छन्, र भन्छन्: "हामीलाई अवश्य क्षमा गरिने छ ।" र यदि यस्तै अरु सम्पत्तिहरू पनि उनको पासमा आउँछन् भने त्यसलाई पनि लिइहाल्नेछन् । के उनीहरूसित यो किताबको यो वाचा लिएको थिएन कि अल्लाहको बारेमा सत्य बाहेक अरु केही नभनुन्, र उनीहरूले यस किताबमा जे छ त्यसलाई पढिसकेका छन् । र आखिरतको घर उनीहरूकै निम्ति उत्तम छ, जो असल काम गर्दछन् । त के तिमी बुझ्दैनौं ?

فَخَلَفَ مِنْۢ بَعْدِهِمْ خَلْفٌ وَّرِثُوا الْكِتٰبَ يَاْخُذُوْنَ عَرَضَ هٰذَا الْاَدْنٰى وَيَقُوْلُوْنَ سَيُغْفَرُ لَنَا ۚ وَاِنْ يَّاْتِهِمْ عَرَضٌ مِّثْلُهٗ يَاْخُذُوْهُ ۗ اَلَمْ يُؤْخَذْ عَلَيْهِمْ مِّيْثَاقُ الْكِتٰبِ اَنْ لَّا يَقُوْلُوْا عَلَى اللّٰهِ اِلَّا الْحَقَّ وَدَرَسُوْا مَا فِيْهِ ۗ وَالدَّارُ الْاٰخِرَةُ خَيْرٌ لِّلَّذِيْنَ يَتَّقُوْنَ ۗ اَفَلَا تَعْقِلُوْنَ ﴿١٦٩﴾

१७०) जुन मानिसहरूले किताबलाई दृढतापूर्वक समातेका छन्, र नियमित रूपमा नमाज़ पढिराखेका छन्, हामीले यस्ता आफूलाई सुधार्ने सदाचारीहरूको प्रतिफल नष्ट गर्दैनौं ।

وَالَّذِيْنَ يُمَسِّكُوْنَ بِالْكِتٰبِ وَاَقَامُوا الصَّلٰوةَ ۗ اِنَّا لَا نُضِيْعُ اَجْرَ الْمُصْلِحِيْنَ ﴿١٧٠﴾

१७१) र स्मरण गर जब हामीले उनीहरूमाथि पहाड ठड्यायौं, त्यो तिनीहरूमाथि छायाँ थियो (शामियाना) र उनीहरूले ठाने कि त्यो उनीहरूमाथि अब खस्न गइराखेको छ । र भन्यौं कि जुन किताब हामीले तिमीलाई दिएका छौं, त्यसलाई दृढतापूर्वक स्वीकार गर र यसमा जुन निर्देशनहरू छन् त्यसलाई याद राख, तिनीहरूबाट यो अपेक्षा छ कि तिमी असल (मुत्तकी) बन्न सक्दछौ ।

وَاِذْ نَتَقْنَا الْجَبَلَ فَوْقَهُمْ كَاَنَّهٗ ظُلَّةٌ وَّظَنُّوْۤا اَنَّهٗ
وَاقِعٌۢ بِهِمْ ۚ خُذُوْا مَاۤ اٰتَيْنٰكُمْ بِقُوَّةٍ وَّاذْكُرُوْا مَا
فِيْهِ لَعَلَّكُمْ تَتَّقُوْنَ ﴿١٧١﴾

१७२) र जब तपाईको पालनकर्ताले आदमको सन्तानको ढाडबाट उनको सन्तति सृष्टि गऱ्यो र उनीहरूलाई स्वयं उनकै लागि स्वीकारोक्ति लियो कि "के म तिम्रो पालनकर्ता होइन ?" उनीहरूले भने : "हो, हामी सबै साक्षी छौं ।" यस्तो यसकारणले गऱ्यौं ताकि तिनीहरूले क़यामतका दिन यो नभनुन, कि "हामीलाई यसको ज्ञान नै थिएन ।"

وَاِذْ اَخَذَ رَبُّكَ مِنْۢ بَنِيْۤ اٰدَمَ مِنْ ظُهُوْرِهِمْ
ذُرِّيَّتَهُمْ وَاَشْهَدَهُمْ عَلٰۤى اَنْفُسِهِمْ ۚ اَلَسْتُ
بِرَبِّكُمْ ؕ قَالُوْا بَلٰى ۛۚ شَهِدْنَا ۛۚ اَنْ تَقُوْلُوْا يَوْمَ الْقِيٰمَةِ
اِنَّا كُنَّا عَنْ هٰذَا غٰفِلِيْنَ ﴿١٧٢﴾

१७३) वा यो भन कि "अघि शिर्क हाम्रा पूर्वजले गरे । हामी त उनीपछि उनका सन्तति भयौं ।" त के तिमीले हामीलाई मित्थ्याचारीहरूले गरेको क्रियाकलापको लागि विनष्ट पार्ने छौ ।

اَوْ تَقُوْلُوْۤا اِنَّمَاۤ اَشْرَكَ اٰبَآؤُنَا مِنْ قَبْلُ وَكُنَّا ذُرِّيَّةً
مِّنْۢ بَعْدِهِمْ ۚ اَفَتُهْلِكُنَا بِمَا فَعَلَ الْمُبْطِلُوْنَ ﴿١٧٣﴾

१७४) हामी यसैप्रकार आयातलाई स्पष्ट

وَكَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ وَلَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿١٧٤﴾

बर्णन गर्छौं, ताकि यिनीहरू हामीतिर फर्कुन् ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ الَّذِي آتَيْنَاهُ آيَاتِنَا فَانسَلَخَ مِنْهَا فَأَتْبَعَهُ الشَّيْطَانُ فَكَانَ مِنَ الْغَاوِينَ ﴿١٧٥﴾

१७५) र तिनीहरूलाई त्यस मानिसको खबर सुनाइदिनुस् कि जसलाई हामीले आफ्ना आयत प्रदान गऱ्यौं तर ऊ त्यसबाट पूर्णतः निष्कासित भइहाल्यो, अनि शैतान उसको पछि लाग्यो । अन्ततः ऊ पथभ्रष्ट भइहाल्यो ।

وَلَوْ شِئْنَا لَرَفَعْنَاهُ بِهَا وَلَٰكِنَّهُ أَخْلَدَ إِلَى الْأَرْضِ وَاتَّبَعَ هَوَاهُ ۚ فَمَثَلُهُ كَمَثَلِ الْكَلْبِ إِن تَحْمِلْ عَلَيْهِ يَلْهَثْ أَوْ تَتْرُكْهُ يَلْهَث ۚ ذَّٰلِكَ مَثَلُ الْقَوْمِ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا ۚ فَاقْصُصِ الْقَصَصَ لَعَلَّهُمْ يَتَفَكَّرُونَ ﴿١٧٦﴾

१७६) र यदि हामीले चाहेको भए यी आयातबाट उसलाई उच्च दर्जा प्रदान गर्थ्यौं, तर त्यो त धर्तीतिर प्रवृत्त भयो, र आफ्नो निकृष्ट इच्छाको पछि लाग्यो, तसर्थ उसको उदाहरण कुकुर जस्तो हुन गयो कि यदि तिमीले उसमाथि बोझाहाल्वौ भनेपनि त्यसले जिब्रो निकाली हाँप्ने गर्छ वा छाडिदिनुस् तैपनि त्यस्तै गरिरहन्छ । यही उदाहरण ती मानिसहरूको छ, जसले हाम्रा आयातहरूलाई झूठा भने । तसर्थ तपाईले यो वृत्तान्त बर्णन गरिदिनुस् शायद उनीहरूले सोच-विचार गर्न सकुन् ।

سَاءَ مَثَلًا الْقَوْمُ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا وَأَنفُسَهُمْ كَانُوا يَظْلِمُونَ ﴿١٧٧﴾

१७७) उनीहरूको उदाहरण पनि नराम्रो छ, जसले हाम्रा आयतहरूलाई झूठो ठान्दछन् र तिनीहरू आफ्नो नोक्सानी नै गर्दछन् ।

مَن يَهْدِ اللَّهُ فَهُوَ الْمُهْتَدِي ۖ وَمَن يُضْلِلْ فَأُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿١٧٨﴾

१७८) जसलाई अल्लाहले (असल) मार्ग देखाउँछ, त्यही सोझो मार्ग

पाउनेवाला हुन्छ, र जसलाई उसले मार्गबाट बञ्चित गर्दछ, तिनै घाटामा पर्नेवाला हुन्छन् ।

وَلَقَدْ ذَرَأْنَا لِجَهَنَّمَ كَثِيرًا مِّنَ الْجِنِّ وَالْإِنسِ ۖ لَهُمْ قُلُوبٌ لَّا يَفْقَهُونَ بِهَا وَلَهُمْ أَعْيُنٌ لَّا يُبْصِرُونَ بِهَا وَلَهُمْ آذَانٌ لَّا يَسْمَعُونَ بِهَا ۚ أُولَٰئِكَ كَالْأَنْعَامِ بَلْ هُمْ أَضَلُّ ۚ أُولَٰئِكَ هُمُ الْغَافِلُونَ ﴿١٧٩﴾

१७९) र हामीले यस्ता धेरै जिन्न र मानिसहरू नर्कका निम्ति सृष्टि गरेका छौं, तिनीहरूको हृदय छन् तर जसबाट बुझ्दैनन्, र तिनीहरूको आँखा छन्, तर जसबाट देख्दैनन्, र उनीहरूको कान छन्, जसबाट सुन्दैनन् । यी मानिसहरू पशु समान छन् बरु त्यसभन्दा पनि बढी (पथभ्रष्ट) छन् । यिनीहरू नै अचेत छन् ।

وَلِلَّهِ الْأَسْمَاءُ الْحُسْنَىٰ فَادْعُوهُ بِهَا ۖ وَذَرُوا الَّذِينَ يُلْحِدُونَ فِي أَسْمَائِهِ ۚ سَيُجْزَوْنَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٨٠﴾

१८०) र राम्रा-राम्रा नाम अल्लाहकै लागि हुन् । यसर्थ ती नामहरूद्वारा नै उसलाई पुकार र यस्ता मानिस सित सम्बन्ध पनि नराख जो उसको नामको सम्बन्धमा कुटिलता गर्छन् । यिनीहरू यसका निम्ति अवश्य नै दण्ड पाउने छन्

وَمِمَّنْ خَلَقْنَا أُمَّةٌ يَهْدُونَ بِالْحَقِّ وَبِهِ يَعْدِلُونَ ﴿١٨١﴾

१८१) हामीले सृष्टि गरेका प्राणीहरूमध्ये एउटा यस्तो समूह पनि छ, जसले सत्य अनुसार मार्ग देखाउँछ र त्यसै बमोजिम न्याय पनि गर्दछ ।

وَالَّذِينَ كَذَّبُوا بِآيَاتِنَا سَنَسْتَدْرِجُهُم مِّنْ حَيْثُ لَا يَعْلَمُونَ ﴿١٨٢﴾

१८२) र जसले हाम्रा आयतहरूलाई झूठो ठान्दछन्, हामीले उनीहरूलाई क्रमशः आफ्नो पकडमा लगिराखेका छौं । यस्तो तरीकाबाट जुन उनीहरू जान्दैनन् ।

وَأُمْلِي لَهُمْ ۚ إِنَّ كَيْدِي مَتِينٌ ﴿١٨٣﴾

१८३) (म त) उनीहरूलाई छूट दिइराखेको छु। निश्चय नै मेरो योजना अत्यन्त सुदृढ छ।

أَوَلَمْ يَتَفَكَّرُوا ۗ مَا بِصَاحِبِهِم مِّن جِنَّةٍ ۚ إِنْ هُوَ إِلَّا نَذِيرٌ مُّبِينٌ ﴿١٨٤﴾

१८४) के उनीहरूले यस कुराको विचार गरेनन् कि उनको साथीलाई उन्माद छैन। उनी त मात्र एउटा स्पष्ट रूपले सचेत गराउनेवाला हुन्।

أَوَلَمْ يَنظُرُوا فِي مَلَكُوتِ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا خَلَقَ اللَّهُ مِن شَيْءٍ وَأَنْ عَسَىٰ أَن يَكُونَ قَدِ اقْتَرَبَ أَجَلُهُمْ ۖ فَبِأَيِّ حَدِيثٍ بَعْدَهُ يُؤْمِنُونَ ﴿١٨٥﴾

१८५) र के उनीहरूले विचार पुऱ्याएनन् आकाश र धर्तीको राज्यमा, जुन कुरो अल्लाहले सृष्टि गरेको छ, र यस कुरोमाथि पनि कि सम्भव छ उनको (मृत्युको) अवधि नजिक आइपुगेको छ। फेरि कुरआन पश्चात कुन कुरोमाथि यिनीहरूले ईमान ल्याउने छन्।

مَن يُضْلِلِ اللَّهُ فَلَا هَادِيَ لَهُ ۚ وَيَذَرُهُمْ فِي طُغْيَانِهِمْ يَعْمَهُونَ ﴿١٨٦﴾

१८६) जसलाई अल्लाहले विचलित गर्दछ, उसलाई कसैले सही बाटोमा ल्याउन सक्दैन, र अल्लाहले उनीहरूलाई मार्ग विचलनमा छाडिदिन्छन्।

يَسْأَلُونَكَ عَنِ السَّاعَةِ أَيَّانَ مُرْسَاهَا ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ رَبِّي ۖ لَا يُجَلِّيهَا لِوَقْتِهَا إِلَّا هُوَ ۚ ثَقُلَتْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ لَا تَأْتِيكُمْ إِلَّا بَغْتَةً ۗ يَسْأَلُونَكَ كَأَنَّكَ حَفِيٌّ عَنْهَا ۖ قُلْ إِنَّمَا عِلْمُهَا عِندَ اللَّهِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿١٨٧﴾

१८७) यिनीहरूले तपाईसित क़यामतको सम्बन्धमा प्रश्न गर्दछन्: कि "यो कहिले आउनेछ" ? तपाईले भनिदिनुस्: कि "यसको ज्ञान मात्र मेरो पालनकर्तासँग छ"। अत: अल्लाह बाहेक अरु कसैले त्यसलाई त्यसको समय प्रकटगर्न सक्दैन। त्यो आकाश र धर्तीमा अत्यन्त ठूलो (घटना) हुनेछ र त्यो एक्कासी तिमीमाथि आइलाग्नेछ। उनीहरू

तपाईसित यस प्रकार सोध्छन् जस्तो कि त्यसको बारेमा तपाईलाई राम्ररी थाहा छ । भनिदिनुस्: यसको ज्ञान खास अल्लाहसित नै छ, तर यो कुरा धेरैले बुझ्दैनन् ।

قُلْ لَّآ اَمْلِكُ لِنَفْسِىْ نَفْعًا وَّلَا ضَرًّا اِلَّا مَا شَآءَ
اللّٰهُ ؕ وَلَوْ كُنْتُ اَعْلَمُ الْغَيْبَ لَاسْتَكْثَرْتُ مِنَ
الْخَيْرِ ۛۚ وَمَا مَسَّنِىَ السُّوْٓءُ ۛؕ اِنْ اَنَا اِلَّا نَذِيْرٌ
وَّبَشِيْرٌ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿۱۸۸﴾

१८८) भनिदिनुस्: मसंग आफ्नो निम्ति पनि कुनै लाभको अधिकार छैन, र न कुनै हानिको, तर त्यति मात्र जति अल्लाहले चाहेको हुन्छ, र यदि म अदृश्यका कुरा जान्ने भए, मैले धेरै नाफा प्राप्त गरिहाल्थे र मलाई कुनै नोक्सानी हुने थिएन । म त मात्र सचेत गराउने र शुभ-समाचार दिनेवाला हूँ, त्यस्ता मानिसहरूलाई जसले ईमान ल्याएका छन् ।

هُوَ الَّذِىْ خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ وَّجَعَلَ
مِنْهَا زَوْجَهَا لِيَسْكُنَ اِلَيْهَا ۚ فَلَمَّا تَغَشّٰىهَا حَمَلَتْ
حَمْلًا خَفِيْفًا فَمَرَّتْ بِهٖ ۚ فَلَمَّآ اَثْقَلَتْ دَّعَوَا اللّٰهَ
رَبَّهُمَا لَئِنْ اٰتَيْتَنَا صَالِحًا لَّنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ﴿۱۸۹﴾

१८९) त्यो अल्लाह नै हो, जसले तिमीलाई एकै शरीरबाट सृष्टि गर्‍यो र त्यसैबाट उसको जोडी बनायो ताकि आफ्नो जोडीबाट शान्ति प्राप्त गर्न सकोस् । अनि जब लोग्नेले स्वास्नीसित सम्पर्क गर्‍यो त त्यसलाई हलुका गर्भ रह्यो । यसर्थ तिनले त्यसलाई लिई हिंडडुल गरिराखिन् । अनि जब तिनी गह्रुँगो भइन् तब लोग्ने स्वास्नी दुवैले अल्लाहसित जो उनको पालनकर्ता हो, प्रार्थना गर्न थाले कि यदि तिमीले हामीलाई पूर्ण स्वस्थ्य बच्चा दिए त निश्चय

नै हामी तिमी प्रति ठुलो कृतज्ञता प्रकट गर्नेछौं ।

فَلَمَّآ اٰتٰىهُمَا صَالِحًا جَعَلَا لَهٗ شُرَكَآءَ فِيْمَآ اٰتٰىهُمَا ۚ فَتَعٰلَى اللّٰهُ عَمَّا يُشْرِكُوْنَ ﴿١٩٠﴾

१९०) तसर्थ अल्लाहले जब दुबैलाई पूर्ण स्वस्थ बच्चा दियो त ती दुवैले अल्लाहबाट प्रदान गरिएको कुरामा त्यसको साझेदार निर्धारित गर्न थाले । किन्तु अल्लाह पवित्र छ उनको शिर्क (साझेदारी) बाट ।

اَيُشْرِكُوْنَ مَا لَا يَخْلُقُ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ۚ ﴿١٩١﴾

१९१) के तिनीहरू त्यस्तालाई साझेदार ठहऱ्याउँछन्, जो कुनै कुराको सृष्टि गर्न सक्दैनन्, र स्वयं नै सृष्टि गरिएका हुन् ।

وَلَا يَسْتَطِيْعُوْنَ لَهُمْ نَصْرًا وَّلَآ اَنْفُسَهُمْ يَنْصُرُوْنَ ﴿١٩٢﴾

१९२) र तिनीहरूले उनीहरूलाई कुनै प्रकारको सहायता गर्न सक्दैनन् र आफूलाई पनि सहायता गर्न सक्दैनन् ।

وَاِنْ تَدْعُوْهُمْ اِلَى الْهُدٰى لَا يَتَّبِعُوْكُمْ ۗ سَوَآءٌ عَلَيْكُمْ اَدَعَوْتُمُوْهُمْ اَمْ اَنْتُمْ صَامِتُوْنَ ﴿١٩٣﴾

१९३) र यदि तिमीले यिनीहरूलाई कुनै कुरा बताउन पुकाछौं भने तिनीले भनेको मान्दैनन् । तिम्रो निम्ति दुवै कुरा समान छन् चाहे तिमीले बोलाऊ या चुप लाग ।

اِنَّ الَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ عِبَادٌ اَمْثَالُكُمْ فَادْعُوْهُمْ فَلْيَسْتَجِيْبُوْا لَكُمْ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٩٤﴾

१९४) वास्तवमा तिमीले अल्लाहलाई छाडि जसलाई पुकार्दछौ, तिनीहरू तिमी जस्तै बन्दा (उपासक) हुन् । तसर्थ तिमी साँचो हौ भने तिमीले तिनीहरूलाई पुकार ताकि तिनीहरूले तिमीले चाहेको कुरा पुरा गरि देऊन् ।

أَلَهُمْ أَرْجُلٌ يَمْشُونَ بِهَا أَمْ لَهُمْ أَيْدٍ يَبْطِشُونَ بِهَا أَمْ لَهُمْ أَعْيُنٌ يُبْصِرُونَ بِهَا أَمْ لَهُمْ ءَاذَانٌ يَسْمَعُونَ بِهَا قُلِ ادْعُوا شُرَكَاءَكُمْ ثُمَّ كِيدُونِ فَلَا تُنظِرُونِ ﴿١٩٥﴾

१९५) के उनका खुट्टा छन् जसबाट हिंडछन वा हातछन् जसबाट कुनै कुरा समात्दछन् वा आँखा छन् जसबाट देख्छन् वा उनको कान छन् जसबाट सुनिराखेको छन् । तपाई भनिदिनुस् कि आफ्ना सबै सहभागीहरूलाई पुकार र मेरो नोक्सानी गर्ने उपाय गर यस प्रकार कि मलाई मुहलत न मिलोस् ।

إِنَّ وَلِـِّۧيَ اللَّهُ الَّذِي نَزَّلَ الْكِتَابَ وَهُوَ يَتَوَلَّى الصَّالِحِينَ ﴿١٩٦﴾

१९६) निश्चय नै मेरो सहायक अल्लाह नै छ, जसले यो किताब उतारेको छ, र त्यसैले सदाचारीहरूको सहायता गर्दछ ।

وَالَّذِينَ تَدْعُونَ مِن دُونِهِ لَا يَسْتَطِيعُونَ نَصْرَكُمْ وَلَا أَنفُسَهُمْ يَنصُرُونَ ﴿١٩٧﴾

१९७) तिमीहरूले अल्लाहलाई छाडि जसलाई पूजा गर्दछौ, त्यसले तिम्रो कुनै सहायता गर्न सक्दैनन् र न आफ्नै सहायता गर्न सक्छन् ।

وَإِن تَدْعُوهُمْ إِلَى الْهُدَى لَا يَسْمَعُوا وَتَرَاهُمْ يَنظُرُونَ إِلَيْكَ وَهُمْ لَا يُبْصِرُونَ ﴿١٩٨﴾

१९८) र यदि उनलाई सोझो मार्गतिर बोलाउनु हुन्छ भने तिनीहरूले सुन्ने छैनन् । र तिनीहरूलाई तपाईले यसरी देख्नु हुन्छ जस्तो कि उनीहरूले तपाईलाई देखिराखेका छन्, जबकि तिनीहरूले केही पनि देख्दैनन् ।

خُذِ الْعَفْوَ وَأْمُرْ بِالْعُرْفِ وَأَعْرِضْ عَنِ الْجَاهِلِينَ ﴿١٩٩﴾

१९९) तपाई क्षमाको नीति अपनाउनुस्, र असल कामको उपदेश दिदै गर्नुस् र अज्ञानीहरूबाट टाढा बस्नुस् ।

وَإِمَّا يَنزَغَنَّكَ مِنَ الشَّيْطَٰنِ نَزْغٌ فَاسْتَعِذْ بِاللَّهِ ۚ إِنَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٢٠٠﴾

२००) र यदि तपाईलाई शैतानतिरबाट कुनै असमंजस आउँछ भने अल्लाहसित शरण माग्ने गर्नुस् । निश्चय नै ऊ सबै कुरा सुन्दछ र जान्दछ ।

إِنَّ الَّذِينَ اتَّقَوْا إِذَا مَسَّهُمْ طَائِفٌ مِّنَ الشَّيْطَٰنِ تَذَكَّرُوا فَإِذَا هُم مُّبْصِرُونَ ﴿٢٠١﴾

२०१) निश्चय नै अल्लाहसित डर मान्नेहरूलाई जब कुनै खतराको संकेत आउँछ तब उनी जिक्र गर्न थाल्छन्, तसर्थ एक्कासी उनका आँखाहरू खुलिहाल्छन् ।

وَإِخْوَانُهُمْ يَمُدُّونَهُمْ فِي الْغَيِّ ثُمَّ لَا يُقْصِرُونَ ﴿٢٠٢﴾

२०२) र जो शैतानका मातहतमा छन्, तिनहिरूले उनीहरूलाई कुमार्ग तिर तानेर लग्छन्, अनि त्यसमा कुनै कसर बाँकी राख्दैनन् ।

وَإِذَا لَمْ تَأْتِهِم بِآيَةٍ قَالُوا لَوْلَا اجْتَبَيْتَهَا ۚ قُلْ إِنَّمَا أَتَّبِعُ مَا يُوحَىٰ إِلَيَّ مِن رَّبِّي ۚ هَٰذَا بَصَائِرُ مِن رَّبِّكُمْ وَهُدًى وَرَحْمَةٌ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٢٠٣﴾

२०३) जब तपाईले कुनै चमत्कार उनीहरू समक्ष ल्याउनुहुन्न तब उनीहरूले भन्छन्: कि “तपाईले स्वयं यो चमत्कार किन ल्याउनु भएन” ? तपाईले भनिदिनुस्: कि म त त्यही कुराको पालन गर्दछु जुन आदेश मेरो पालनकर्ताले पठाएको छ । यी तपाईको पालनकर्ताको तर्फबाट प्रमाण हुन्, र ईमानवालाहरूको लागि मार्गदर्शन र दया हो ।

وَإِذَا قُرِئَ الْقُرْآنُ فَاسْتَمِعُوا لَهُ وَأَنصِتُوا لَعَلَّكُمْ تُرْحَمُونَ ﴿٢٠٤﴾

२०४) र जब कुरआन पढिन्छ तब त्यतातिर ध्यान दिएर सुन, र चुप लागेर बस, ताकि तिमीमाथि दया गरियोस् ।

وَاذْكُرْ رَّبَّكَ فِي نَفْسِكَ تَضَرُّعًا وَّخِيفَةً وَّدُونَ الْجَهْرِ مِنَ الْقَوْلِ بِالْغُدُوِّ وَالْآصَالِ وَلَا تَكُن مِّنَ الْغَافِلِينَ ﴿٢٠٥﴾

२०५) र हे नबी (स.)! आफ्नो पालनकर्तालाई आफ्नो मनमा बिहान बेलुका विनम्रतापूर्वक, डर मान्दै मसिनो आवाजमा स्मरण गर्दै गर र बेवास्ता गर्नेहरूमध्येको नहोऊ ।

إِنَّ الَّذِينَ عِندَ رَبِّكَ لَا يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِهِ وَيُسَبِّحُونَهُ وَلَهُ يَسْجُدُونَ ﴿٢٠٦﴾

२०६) निःसन्देह जो तिम्रो पालनकर्ताको समीपमा छन्, तिनीहरू उसको उपासनाबाट अभिमान गर्दैनन्: तिनीहरू त उसको महीमागान गर्दछन् र उसैलाई ढोग्दछन् ।



# सूरतुल् अनफ़ाल-८



सूरतुल् अन्फ़ाल मदनी हो, र यसमा ७५ आयतहरू र १० रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू अल्लाहको नामबाट, जो बडो कृपालु, अत्यन्त दयालु छ ।**

يَسْـَٔلُوْنَكَ عَنِ الْاَنْفَالِ ؕ قُلِ الْاَنْفَالُ لِلّٰهِ وَالرَّسُوْلِ ۚ فَاتَّقُوا اللّٰهَ وَاَصْلِحُوْا ذَاتَ بَيْنِكُمْ ۪ وَاَطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗۤ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ①

१) यिनीहरू तपाईसित धर्मयुद्धमा प्राप्त जितिएका धनको विषयमा सोध्छन्, तपाईले भनिदिनुस्: यी युद्धमा प्राप्त भएको धन अल्लाह र रसुलका हुन् । अतः अल्लाहसित डर र आफ्ना सम्बन्धहरू सुमधुर राख र अल्लाह र उसका रसूलको आज्ञा पालन गर, यदि तिमी ईमानवाला हौ भने ।

اِنَّمَا الْمُؤْمِنُوْنَ الَّذِيْنَ اِذَا ذُكِرَ اللّٰهُ وَجِلَتْ قُلُوْبُهُمْ وَاِذَا تُلِيَتْ عَلَيْهِمْ اٰيٰتُهٗ زَادَتْهُمْ اِيْمَانًا وَّعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ②

२) ईमानवालाहरू ती नै हुन् जसका हृदय काम्छन्, जुनबेला अल्लाहको वर्णन हुन्छ । र जब उनका अगाडि अल्लाहका आयतहरू पढेर सुनाइन्छन् त तिनीहरूको ईमानमा झन् बृद्धि भइहाल्छ, र तिनीहरू आफ्ना पालनकर्तामा भरोसा गर्दछन् ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُوْنَ ③

३) यिनीहरू ती मानिस हुन् जो नमाज़लाई कायम राख्दछन्, र हामीले उनीहरूलाई जे-जति दिएका छौं, त्यसबाट (राम्रो कामको लागि) खर्च गर्छन् ।

اُولٰٓئِكَ هُمُ الْمُؤْمِنُوْنَ حَقًّا ؕ لَهُمْ دَرَجٰتٌ عِنْدَ رَبِّهِمْ وَمَغْفِرَةٌ وَّرِزْقٌ كَرِيْمٌ ④

४) सच्चा ईमानवाला यी मानिसहरू हुन्, यिनका निम्ति यिनका पालनकर्ताकहाँ गौरवपूर्ण स्थानहरू छन् र मुक्ति र

सम्मानित जीविका छ ।

५) (यो त्यस्तै) जस्तो तपाईंको पालनकर्ताले तपाईंको घरबाट हककोसाथ विदा गऱ्यो, किन्तु इमानवालाहरूमध्ये एक समूहलाई यो अप्रिय लाग्यो ।

كَمَآ أَخۡرَجَكَ رَبُّكَ مِنۢ بَيۡتِكَ بِٱلۡحَقِّ وَإِنَّ فَرِيقٗا مِّنَ ٱلۡمُؤۡمِنِينَ لَكَٰرِهُونَ ٥

६) उनीहरूले सत्यको बिषयमा त्यो स्पष्ट भइसकेपछि तपाईंसँग यसरी झगडा गरिराखेका थिए कि तिनीहरूले आँखाले देखिएको मृत्युतिर धकेलिंदै छन् ।

يُجَٰدِلُونَكَ فِي ٱلۡحَقِّ بَعۡدَمَا تَبَيَّنَ كَأَنَّمَا يُسَاقُونَ إِلَى ٱلۡمَوۡتِ وَهُمۡ يَنظُرُونَ ٦

७) र तिमीहरू त्यस समयलाई याद गर जब अल्लाह तिमीसित वाचा गरिराखेको थियो कि दुई समुहहरूमध्ये एउटा तिम्रा हाथमा आउनेछ र तिमी चाहन्थ्यौं कि निःशस्त्र समूह तिम्रो हातमा आओस् । र अल्लाह यो चाहन्थे कि आफ्नो आदेशको सत्यता प्रमाणित गरोस् र ती इन्कार गर्नेहरूको जरा काटिदेओस् ।

وَإِذۡ يَعِدُكُمُ ٱللَّهُ إِحۡدَى ٱلطَّآئِفَتَيۡنِ أَنَّهَا لَكُمۡ وَتَوَدُّونَ أَنَّ غَيۡرَ ذَاتِ ٱلشَّوۡكَةِ تَكُونُ لَكُمۡ وَيُرِيدُ ٱللَّهُ أَن يُحِقَّ ٱلۡحَقَّ بِكَلِمَٰتِهِۦ وَيَقۡطَعَ دَابِرَ ٱلۡكَٰفِرِينَ ٧

८) जसबाट सत्यलाई सत्य गरेर देखाओस् र असत्यलाई असत्य, चाहे अपराधिहरूलाई जति नै अप्रिय किन नलागोस् ।

لِيُحِقَّ ٱلۡحَقَّ وَيُبۡطِلَ ٱلۡبَٰطِلَ وَلَوۡ كَرِهَ ٱلۡمُجۡرِمُونَ ٨

९) त्यो समय यादगर जब तिमीले आफ्नो पालनकर्तासित विन्ती गरिराखेका थियौ, अनि अल्लाह तआलाले तिम्रो पुकार सुनिहाल्यो ।

إِذۡ تَسۡتَغِيثُونَ رَبَّكُمۡ فَٱسۡتَجَابَ لَكُمۡ أَنِّي مُمِدُّكُم بِأَلۡفٖ مِّنَ ٱلۡمَلَٰٓئِكَةِ مُرۡدِفِينَ ٩

(उसले भन्यो) म तिमीलाई एक हजार फरिश्ताहरूबाट मद्दत गर्ने छु जो लगातार आउँदै गर्नेछन् ।

وَمَا جَعَلَهُ اللَّهُ إِلَّا بُشْرَىٰ وَلِتَطْمَئِنَّ بِهِ قُلُوبُكُمْ ۚ وَمَا
النَّصْرُ إِلَّا مِنْ عِنْدِ اللَّهِ ۚ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿١٠﴾

१०) र अल्लाह तआलाले यो सहायता मात्र यस कारणले गऱ्यो कि यो एउटा शुभसन्देश होस् र यसबाट तिम्रा हृदयहरूलाई सन्तुष्टि होस् । सहायता अल्लाहबाट नै हुन्छ । जो अल्लाह अधिपत्यशाली तत्वदर्शी छ ।

إِذْ يُغَشِّيكُمُ النُّعَاسَ أَمَنَةً مِنْهُ وَيُنَزِّلُ عَلَيْكُمْ
مِنَ السَّمَاءِ مَاءً لِيُطَهِّرَكُمْ بِهِ وَيُذْهِبَ
عَنْكُمْ رِجْزَ الشَّيْطَانِ وَلِيَرْبِطَ عَلَىٰ قُلُوبِكُمْ
وَيُثَبِّتَ بِهِ الْأَقْدَامَ ﴿١١﴾

११) त्यस समयलाई स्मरण गर, जब उसले आफ्नो तर्फबाट शान्तिका लागि तिमीलाई निद्रा प्रदान गरि रहेको थियो, र तिमीमाथि आकाशबाट पानी बर्षाइराखेको थियो, ताकि त्यस पानीबाट तिमीलाई पवित्र गरोस् र शैतानी अपवित्रतालाई तिमीबाट टाढा राखोस्, र तिम्रा हृदयहरूलाई मजबूत बनाओस् र तिम्रा पाइलाहरूलाई सुदृढ गरोस् ।

إِذْ يُوحِي رَبُّكَ إِلَى الْمَلَائِكَةِ أَنِّي مَعَكُمْ فَثَبِّتُوا
الَّذِينَ آمَنُوا ۚ سَأُلْقِي فِي قُلُوبِ الَّذِينَ كَفَرُوا
الرُّعْبَ فَاضْرِبُوا فَوْقَ الْأَعْنَاقِ وَاضْرِبُوا
مِنْهُمْ كُلَّ بَنَانٍ ﴿١٢﴾

१२) त्यो समयलाई यादगर जबकि तपाईको पालनकर्ताले फरिश्ताहरूलाई भनिराखेको थियो "कि म तिम्रो साथमा छु । अतः तिमीले ईमानवालाहरूलाई हिम्मत बढाउँदै गर । म इन्कार गर्नेवालाहरूको हृदयमा भय उत्पन्न गराइदिन्छु । तसर्थ तिमी गर्दनमा प्रहार गर र उनका औंलाहरूको टुप्पोमा चोट पुऱ्याऊ ।

ذٰلِكَ بِاَنَّهُمْ شَآقُّوا اللّٰهَ وَرَسُوْلَهٗ ۚ وَمَنْ يُّشَاقِقِ اللّٰهَ وَرَسُوْلَهٗ فَاِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ﴿١٣﴾

१३) यो यस कुराको सजाय हो कि उनीहरूले अल्लाह र उसको रसूलको विरोध गरे, र जसले अल्लाहको र उसको रसूलको विरोध गर्दछ, त्यसलाई अल्लाहले निःसन्देह सख्त सजाय दिनेवाला छ ।

ذٰلِكُمْ فَذُوْقُوْهُ وَاَنَّ لِلْكٰفِرِيْنَ عَذَابَ النَّارِ ﴿١٤﴾

१४) तसर्थ यो सजाय चाख, र जानीराख कि काफिरहरूको निम्ति नर्कको यातना निर्धारित नै छ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِذَا لَقِيْتُمُ الَّذِيْنَ كَفَرُوْا زَحْفًا فَلَا تُوَلُّوْهُمُ الْاَدْبَارَ ﴿١٥﴾

१५) ईमानवालाहरू हो ! जब काफिरहरूसित तिम्रो मुकाबिला हुन्छ त तिमी पिठ्यू नफर्काऊ ।

وَمَنْ يُّوَلِّهِمْ يَوْمَىِٕذٍ دُبُرَهٗۤ اِلَّا مُتَحَرِّفًا لِّقِتَالٍ اَوْ مُتَحَيِّزًا اِلٰى فِئَةٍ فَقَدْ بَآءَ بِغَضَبٍ مِّنَ اللّٰهِ وَمَاْوٰىهُ جَهَنَّمُ ۚ وَبِئْسَ الْمَصِيْرُ ﴿١٦﴾

१६) र जुन ब्यक्तिले तिनीहरूबाट यस अवसरमा पिठ्यू फर्काउनेछ,-तर यदि उसले युद्ध चालको रूपमा वा अर्को टुकडीसँग शरण लिन आउँछ-त्यो अर्कै कुरा हो । बाँकी अरु जसले यस्तो गर्नेछ, त्यो अल्लाहको क्रोधमा पर्नेछ । र त्यसको बासस्थान नर्क हुनेछ र त्यो साह्रै नराम्रो ठाउँ हो ।

فَلَمْ تَقْتُلُوْهُمْ وَلٰكِنَّ اللّٰهَ قَتَلَهُمْ ۪ وَمَا رَمَيْتَ اِذْ رَمَيْتَ وَلٰكِنَّ اللّٰهَ رَمٰى ۚ وَلِيُبْلِيَ الْمُؤْمِنِيْنَ مِنْهُ بَلَآءً حَسَنًا ؕ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ﴿١٧﴾

१७) तिमीले तिनीहरूलाई मारेनौ, तर अल्लाहले नै तिनीहरूलाई मार्‍यो र तपाईले माटोको डल्लो फ्याँक्नु भएन बरु त्यो अल्लाह तआलाले फ्याँक्यो, र यस कारण कि मुसलमानहरूलाई आफ्नो तर्फबाट उनीहरूको परिश्रमको राम्रो प्रतिफल देओस् । निःसन्देह अल्लाह

धेरै सुन्नेवाला, धेरै जान्नेवाला छ ।

१८) यो भयो र (दोस्रो कुरा यो छ कि) अल्लाह तआलाले काफिरहरूको योजनालाई कमजोर गर्नु थियो ।

ذٰلِكُمْ وَاَنَّ اللّٰهَ مُوْهِنُ كَيْدِ الْكٰفِرِيْنَ ﴿١٨﴾

१९) यदि तिमीहरू फैसला चाहन्छौ भने त्यो फैसला तिम्रो सामु मौजूदछ, र यदि यसबाट पन्छिनछौ भने यो साह्रै राम्रो छ, र यदि तिमीले फेरि त्यही काम गर्नेछौ भने हामीले पनि फेरि त्यही काम गर्नेछौं, र तिम्रो जत्था तिम्रो कुनै काम लाग्नेछैन, चाहे जति नै अधिक किन नहोस्, र सत्य कुरो यो छ कि अल्लाह ईमानवालाहरूको साथमा छ ।

اِنْ تَسْتَفْتِحُوْا فَقَدْ جَآءَكُمُ الْفَتْحُ ۚ وَاِنْ تَنْتَهُوْا فَهُوَ خَيْرٌ لَّكُمْ ۚ وَاِنْ تَعُوْدُوْا نَعُدْ ۚ وَلَنْ تُغْنِيَ عَنْكُمْ فِئَتُكُمْ شَيْـًٔا وَّلَوْ كَثُرَتْ ۙ وَاَنَّ اللّٰهَ مَعَ الْمُؤْمِنِيْنَ ﴿١٩﴾

२०) हे ईमानवालाहरू ! अल्लाहको र उसको रसूलको आदेश मान र त्यसबाट विमुख नहोऊ जबकि तिमी-सुनी जानी राखेका छौ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اَطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗ وَلَا تَوَلَّوْا عَنْهُ وَاَنْتُمْ تَسْمَعُوْنَ ﴿٢٠﴾

२१) र तिमी उनीहरू जस्तो नहुनु जसले दावी गर्दछन् कि हामीले सुनें जबकि उनीहरू सुन्दैनन् ।

وَلَا تَكُوْنُوْا كَالَّذِيْنَ قَالُوْا سَمِعْنَا وَهُمْ لَا يَسْمَعُوْنَ ﴿٢١﴾

२२) अल्लाहको दृष्टिमा त निकृष्ट प्राणी ती हुन जो बहिरा लाटा हुन्, जसले केहि पनि बुझ्दैनन् ।

اِنَّ شَرَّ الدَّوَآبِّ عِنْدَ اللّٰهِ الصُّمُّ الْبُكْمُ الَّذِيْنَ لَا يَعْقِلُوْنَ ﴿٢٢﴾

२३) यदि अल्लाहले उनीहरूमा कुनै गुण देखेको भए अवश्य नै उनीहरूलाई सुन्ने सौभाग्य प्रदान गर्थ्यो र यदि उसले उनीहरूलाई अहिले सुनाउँछ

وَلَوْ عَلِمَ اللّٰهُ فِيْهِمْ خَيْرًا لَّاَسْمَعَهُمْ ۭ وَلَوْ اَسْمَعَهُمْ لَتَوَلَّوْا وَّهُمْ مُّعْرِضُوْنَ ﴿٢٣﴾

भने उनीहरू तर्केर विमुख भइहाल्थे ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ ٱسْتَجِيبُواْ لِلَّهِ وَلِلرَّسُولِ إِذَا دَعَاكُمْ لِمَا يُحْيِيكُمْ ۖ وَٱعْلَمُوٓاْ أَنَّ ٱللَّهَ يَحُولُ بَيْنَ ٱلْمَرْءِ وَقَلْبِهِۦ وَأَنَّهُۥٓ إِلَيْهِ تُحْشَرُونَ ﴿٢٤﴾

२४) हे ईमानवालाहरू ! तिमीले अल्लाह र रसूलको आदेश मान, जबकि रसूलले तिमीलाई त्यस कुरातिर बोलाउन्छन्, जसले तिमीलाई जीवन प्रदान गर्नेछ र जानीराख कि अल्लाह मानिस र उसको हृदयको बीचमा आड बन्ने गर्दछ । र निःसन्देह तिमी सबै अल्लाहकै पासमा एकत्रित हुनेछौ ।

وَٱتَّقُواْ فِتْنَةً لَّا تُصِيبَنَّ ٱلَّذِينَ ظَلَمُواْ مِنكُمْ خَآصَّةً ۖ وَٱعْلَمُوٓاْ أَنَّ ٱللَّهَ شَدِيدُ ٱلْعِقَابِ ﴿٢٥﴾

२५) त्यस फसादबाट बच, जसले कि आफ्नो चपेटामा विशेषरूपले अत्याचारीहरूलाई मात्र लिने छैन, जानीराख कि अल्लाह कठोर दण्ड दिनेवाला छ ।

وَٱذْكُرُوٓاْ إِذْ أَنتُمْ قَلِيلٌ مُّسْتَضْعَفُونَ فِى ٱلْأَرْضِ تَخَافُونَ أَن يَتَخَطَّفَكُمُ ٱلنَّاسُ فَـَٔاوَىٰكُمْ وَأَيَّدَكُم بِنَصْرِهِۦ وَرَزَقَكُم مِّنَ ٱلطَّيِّبَٰتِ لَعَلَّكُمْ تَشْكُرُونَ ﴿٢٦﴾

२६) र त्यस हालतको स्मरण गर जब तिमी थोरै थियौ, धर्तीमा निर्बल थियौ, भयभीत अवस्थामा रहन्थ्यौ कि अरुले तिमीहरूलाई कहीं नष्ट नगरिहालुन् अनि अल्लाहले तिमीलाई शरण दियो र आफ्नो सहायताले तिमीलाई शक्ति प्रदान गऱ्यो र राम्रा राम्रा कुराहरू दियो जसबाट तिमीले उसको आभार प्रकट गर ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَخُونُواْ ٱللَّهَ وَٱلرَّسُولَ وَتَخُونُوٓاْ أَمَٰنَٰتِكُمْ وَأَنتُمْ تَعْلَمُونَ ﴿٢٧﴾

२७) हे ईमानवालाहरू ! जानीबुझी तिमी अल्लाह र उसको रसूलको हकको साथमा विश्वासघात नगर्नु र आफूले संरक्षण गरेको कुराहरूमा विश्वासघात नगर ।

وَاعْلَمُوْٓا اَنَّمَآ اَمْوَالُكُمْ وَاَوْلَادُكُمْ فِتْنَةٌ ۙ وَّاَنَّ اللّٰهَ عِنْدَهٗٓ اَجْرٌ عَظِيْمٌ ﴿٢٨﴾

२८) र तिमी यस कुरोलाई राम्ररी जानीराख कि तिम्रा धनसम्पत्ति र तिम्रा सन्तानहरू एउटा परीक्षा सामाग्री हुन् र यो कुरो पनि जानीराख कि अल्लाहसंग ठुलो प्रतिफल छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنْ تَتَّقُوا اللّٰهَ يَجْعَلْ لَّكُمْ فُرْقَانًا وَّيُكَفِّرْ عَنْكُمْ سَيِّاٰتِكُمْ وَيَغْفِرْ لَكُمْ ۗ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٢٩﴾

२९) हे ईमानवालाहरू ! यदि तिमी अल्लाहसित डर मान्ने गर्छौ भने उसले तिमीलाई एउटा निर्णायक कुरा प्रदान गर्नेछ । र तिम्रा पापहरू समाप्त गर्ने छ र तिमीलाई क्षमा गर्नेछ । अल्लाह बडो अनुग्रहवाला छ ।

وَاِذْ يَمْكُرُ بِكَ الَّذِيْنَ كَفَرُوْا لِيُثْبِتُوْكَ اَوْ يَقْتُلُوْكَ اَوْ يُخْرِجُوْكَ ۗ وَيَمْكُرُوْنَ وَيَمْكُرُ اللّٰهُ ۗ وَاللّٰهُ خَيْرُ الْمٰكِرِيْنَ ﴿٣٠﴾

३०) र त्यस कुराको पनि चर्चा गर्नुस् जबकि काफिरहरूले तपाई विरुद्ध षडयन्त्र गरी राखेका थिए, ताकि तपाईलाई बन्दी बनाइहालुन्, वा तपाईलाई मारिदिउन् वा तपाईलाई वतनबाट निकाली निर्वासित गराइदिउन् र उनीहरू आफ्ना षडयन्त्र गरिराखेका थिए र अल्लाह आफ्नो योजना कार्यान्वयन गरिराखेको थियो र अल्लाह सबभन्दा बलियो योजनाकार छ ।

وَاِذَا تُتْلٰى عَلَيْهِمْ اٰيٰتُنَا قَالُوْا قَدْ سَمِعْنَا لَوْ نَشَآءُ لَقُلْنَا مِثْلَ هٰذَآ ۙ اِنْ هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ﴿٣١﴾

३१) र जब उनीहरूको सामु हाम्रा आयतहरू पढिन्छन् तब उनीहरू भन्छन्: कि हामीले सुनिहाल्यौं । यदि हामीले चाह्यौं भने यस्ता कुरा हामीले पनि भन्न सक्छौं, यी

त पहिलाका मानिसहरूको तर्फबाट चल्दै आएका अप्रमाणिक कुराहरू हुन् ।

وَاِذْ قَالُوا اللّٰهُمَّ اِنْ كَانَ هٰذَا هُوَ الْحَقَّ مِنْ عِنْدِكَ فَاَمْطِرْ عَلَيْنَا حِجَارَةً مِّنَ السَّمَآءِ اَوِ ائْتِنَا بِعَذَابٍ اَلِيْمٍ ﴿٣٢﴾

३२) र जब उनीहरूले भने कि हे अल्लाह ! यदि तपाईंको तर्फबाट आएको यो कुरआन सत्य छ भने हामीमाथि आकाशबाट ढुङ्गा बर्साइदेऊ, वा हामीमाथि कुनै कष्टदायक यातना पारिदेऊ ।

وَمَا كَانَ اللّٰهُ لِيُعَذِّبَهُمْ وَاَنْتَ فِيْهِمْ ؕ وَمَا كَانَ اللّٰهُ مُعَذِّبَهُمْ وَهُمْ يَسْتَغْفِرُوْنَ ﴿٣٣﴾

३३) र अल्लाह यस्तो गर्ने छैन कि तपाई उनीहरूको माझमा उपस्थित हुँदा उनीहरूलाई यातना देओस्, र उनीहरूले क्षमा-याचना गरिराखेको अवस्थामा अल्लाहले उनीहरूलाई यातनामा ग्रस्त गरिने छैन ।

وَمَا لَهُمْ اَلَّا يُعَذِّبَهُمُ اللّٰهُ وَهُمْ يَصُدُّوْنَ عَنِ الْمَسْجِدِ الْحَرَامِ وَمَا كَانُوْٓا اَوْلِيَآءَهٗ ؕ اِنْ اَوْلِيَآؤُهٗٓ اِلَّا الْمُتَّقُوْنَ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٣٤﴾

३४) र उनीहरूमा के कुरा छ कि उनीहरूलाई अल्लाहले यातना नदेओस्, जबकि उनीहरूले ‘‘मस्जिदे हराम’’ (कअ्बा) बाट रोक्दछन् जबकि उनीहरू त्यस मस्जिदका व्यवस्थापक होइनन्? यसका व्यवस्थापक त मात्र मुत्तकी (संयमी)हरू हुन् । तर उनीमध्ये धेरैले बुझ्दैनन् ।

وَمَا كَانَ صَلَاتُهُمْ عِنْدَ الْبَيْتِ اِلَّا مُكَآءً وَّتَصْدِيَةً ؕ فَذُوْقُوا الْعَذَابَ بِمَا كُنْتُمْ تَكْفُرُوْنَ ﴿٣٥﴾

३५) र उनीहरूको नमाज़ यस घर (कअ्बा) को पासमा सिटी बजाउने र ताली पिट्ने बाहेक अरु केही थिएन । तसर्थ त्यस इन्कारको कारण यस यातनाको स्वाद चाख ।

إِنَّ الَّذِينَ كَفَرُوا يُنفِقُونَ أَمْوَالَهُمْ لِيَصُدُّوا عَن سَبِيلِ اللَّهِ ۚ فَسَيُنفِقُونَهَا ثُمَّ تَكُونُ عَلَيْهِمْ حَسْرَةً ثُمَّ يُغْلَبُونَ ۗ وَالَّذِينَ كَفَرُوا إِلَىٰ جَهَنَّمَ يُحْشَرُونَ ﴿٣٦﴾

३६) निश्चय नै इन्कार गर्नेहरूले आफ्ना माल अल्लाहको मार्गबाट विचलित गराउनका लागि खर्च गर्दछन् । उनीहरू त त्यसलाई खर्च गरि नै रहनेछन्, अनि यही उनको निम्ति पश्चाताप बन्ने छ । अनि उनीहरू पराजित हुनेछन् र इन्कार गर्नेहरू नर्क तिर एकत्रित गरिनेछन् ।

لِيَمِيزَ اللَّهُ الْخَبِيثَ مِنَ الطَّيِّبِ وَيَجْعَلَ الْخَبِيثَ بَعْضَهُ عَلَىٰ بَعْضٍ فَيَرْكُمَهُ جَمِيعًا فَيَجْعَلَهُ فِي جَهَنَّمَ ۚ أُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٣٧﴾

३७) ताकि अल्लाहले पवित्रलाई अपवित्रबाट अलग गरोस् र अपवित्रलाई एक-अर्कासंग मिलाई देओस्, जसबाट ती सबैलाई एकै ठाउँमा जम्मा गरी नर्कमा हालिदेओस् । यिनिहरू नै पुरै घाटामा छन् ।

قُل لِّلَّذِينَ كَفَرُوا إِن يَنتَهُوا يُغْفَرْ لَهُم مَّا قَدْ سَلَفَ وَإِن يَعُودُوا فَقَدْ مَضَتْ سُنَّتُ الْأَوَّلِينَ ﴿٣٨﴾

३८) तपाईले यी काफ़िरहरूसित भनिदिनुस् कि यदि उनीहरूले (आफ्ना क्रियाकलाप) त्यागीदिन्छन् भने उनीहरूका पहिलाका पापहरू क्षमा गरिदिइनेछ, र यदि उनीहरू फेरि त्यही गर्नेछन् भने पूर्ववर्ती काफिरहरूको सम्बन्धमा कानून लागू भइसकेको छ ।

وَقَاتِلُوهُمْ حَتَّىٰ لَا تَكُونَ فِتْنَةٌ وَيَكُونَ الدِّينُ كُلُّهُ لِلَّهِ ۚ فَإِنِ انتَهَوْا فَإِنَّ اللَّهَ بِمَا يَعْمَلُونَ بَصِيرٌ ﴿٣٩﴾

३९) उनीहरूसित यस हदसम्म युद्ध गर, कि तिनीहरूमा फितना(लडाईको कारण) बाँकी नरहोस् र धर्म अल्लाहकै भइहालोस् । अनि यदि उनीहरू आफ्ना (क्रियाकलाप) त्याग गर्छन् भने अल्लाहले उनीहरूको कर्म राम्ररी देखिराखेको छ ।

وَإِن تَوَلَّوْا فَاعْلَمُوا أَنَّ اللَّهَ مَوْلَاكُمْ ۚ نِعْمَ الْمَوْلَىٰ وَنِعْمَ النَّصِيرُ ﴿٤٠﴾

४०) र यदि इन्कार गर्दछन् भने विश्वास राख कि अल्लाह तिम्रो संरक्षक छ । ऊ धेरै राम्रो संरक्षक छ र धेरै राम्रो सहायक छ ।

وَاعْلَمُوا أَنَّمَا غَنِمْتُم مِّن شَيْءٍ فَأَنَّ لِلَّهِ خُمُسَهُ وَلِلرَّسُولِ وَلِذِي الْقُرْبَىٰ وَالْيَتَامَىٰ وَالْمَسَاكِينِ وَابْنِ السَّبِيلِ إِن كُنتُمْ آمَنتُم بِاللَّهِ وَمَا أَنزَلْنَا عَلَىٰ عَبْدِنَا يَوْمَ الْفُرْقَانِ يَوْمَ الْتَقَى الْجَمْعَانِ ۗ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٤١﴾

४१) जानीराख कि ग़नीमतको रूपमा जे-जति माल तिमीले प्राप्त गर्दछौ, त्यसको पाँचौ भाग अल्लाहको र रसूलको र नातेदारहरूको र अनाथहरू र निमुखाहरूको र यात्रीहरूको हो, यदि तिमी अल्लाहमाथि र त्यस कुरोमाथि आस्था राख्दछौ, जुन हामीले आफ्ना भक्तमाथि त्यस दिन उतार्‍यौं, जुन दिन सत्य र असत्य बीच सम्बन्ध-विच्छेदको थियो, जुन दिन दुवै सेनाहरू बीच भिडन्त भयो, र अल्लाहलाई प्रत्येक कुरोमाथि सामर्थ्य प्राप्त छ ।

إِذْ أَنتُم بِالْعُدْوَةِ الدُّنْيَا وَهُم بِالْعُدْوَةِ الْقُصْوَىٰ وَالرَّكْبُ أَسْفَلَ مِنكُمْ ۚ وَلَوْ تَوَاعَدتُّمْ لَاخْتَلَفْتُمْ فِي الْمِيعَادِ ۙ وَلَٰكِن لِّيَقْضِيَ اللَّهُ أَمْرًا كَانَ مَفْعُولًا لِّيَهْلِكَ مَنْ هَلَكَ عَن بَيِّنَةٍ وَيَحْيَىٰ مَنْ حَيَّ عَن بَيِّنَةٍ ۗ وَإِنَّ اللَّهَ لَسَمِيعٌ عَلِيمٌ ﴿٤٢﴾

४२) जबकि तिमी नजिकको किनारमा थियौ, र उनीहरू टाढाको किनारमा थिए र काफिला (मानिसहरूको समूह) तिमीभन्दा तल थियो । यदि तिमी आपसमा समय निश्चित गरेको भए, तिमी निश्चित समयमा पुग्दैनथ्यौ । तर अल्लाहले त एक काम गर्नु नै थियो जो निश्चित भइसकेको थियो, ताकि जो नष्ट हुनुछ त्यो स्पष्ट प्रमाण देखेर नै विनष्ट होस् र जसलाई जीवित रहनु छ त्यो स्पष्ट प्रमाण देखेर जीवित रहोस् । निःसन्देह अल्लाह

रासरी जान्दछ र रासरी सुन्दछ ।

४३) जबकि अल्लाह तआलाले तिमीलाई तिम्रो स्वप्नमा उनीहरूको संख्या कम देखायो, यदि उसले उनीहरूको संखया धेरै देखाएको भए, तिमी कायर हुन सक्थ्यौ, र त्यस कामको बारेमा आपसमा विवाद गर्न सक्थयौ तर अल्लाहले बचाइहाल्यो, निःसन्देह ऊ हृदयका भेदहरूको पूर्ण ज्ञाता छ ।

إِذْ يُرِيكَهُمُ ٱللَّهُ فِى مَنَامِكَ قَلِيلًا ۖ وَلَوْ أَرَىٰكَهُمْ كَثِيرًا لَّفَشِلْتُمْ وَلَتَنَٰزَعْتُمْ فِى ٱلْأَمْرِ وَلَٰكِنَّ ٱللَّهَ سَلَّمَ ۗ إِنَّهُۥ عَلِيمٌۢ بِذَاتِ ٱلصُّدُورِ ﴿٤٣﴾

४४) त्यस बखत जब तिम्रो परस्पर भिडन्त भयो उसले तिम्रो दृष्टिमा उनीहरूलाई धेरै कम र तिमीलाई उनीहरूको दृष्टिमा कम गरी देखाइराखेको थियो, ताकि अल्लाहले त्यस कामलाई सम्पन्न गरोस् जुन हुनु निश्चित थियो, र सम्पूर्ण काम अल्लाहतिर नै फर्कन्छन् ।

وَإِذْ يُرِيكُمُوهُمْ إِذِ ٱلْتَقَيْتُمْ فِىٓ أَعْيُنِكُمْ قَلِيلًا وَيُقَلِّلُكُمْ فِىٓ أَعْيُنِهِمْ لِيَقْضِىَ ٱللَّهُ أَمْرًا كَانَ مَفْعُولًا ۗ وَإِلَى ٱللَّهِ تُرْجَعُ ٱلْأُمُورُ ﴿٤٤﴾

४५) हे इमानवालाहरू ! जब तिम्रो कुनै विरोधी समूहसँग भिडन्त हुन्छ त दृढ रह, र अल्लाहलाई धेरै-धेरै स्मरण गर ताकि तिमीलाई सफलता प्राप्त होस् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا لَقِيتُمْ فِئَةً فَٱثْبُتُوا۟ وَٱذْكُرُوا۟ ٱللَّهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ ﴿٤٥﴾

४६) र अल्लाह र उसको रसूलको आज्ञा मानी राख, आपसमा विवाद नगर, अन्यथा कायर बन्नेछौ, र बल कम हुँदै जानेछ, र धैर्य र संयमबाट काम लिनु । निश्चय नै अल्लाह धैर्य गर्नेहरूको साथमा छ ।

وَأَطِيعُوا۟ ٱللَّهَ وَرَسُولَهُۥ وَلَا تَنَٰزَعُوا۟ فَتَفْشَلُوا۟ وَتَذْهَبَ رِيحُكُمْ ۖ وَٱصْبِرُوٓا۟ ۚ إِنَّ ٱللَّهَ مَعَ ٱلصَّٰبِرِينَ ﴿٤٦﴾

وَلَا تَكُوْنُوْا كَالَّذِيْنَ خَرَجُوْا مِنْ دِيَارِهِمْ بَطَرًا وَّرِئَآءَ النَّاسِ وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ ؕ وَاللّٰهُ بِمَا يَعْمَلُوْنَ مُحِيْطٌ ﴿٤٧﴾

४७) र उनीहरू जस्तो नबन जो अट्टेरीपना गर्दै अरु मानिसहरूलाई देखाउनका लागि आफ्ना घरबाट निस्केका थिए, र अल्लाहको मार्गबाट रोक्दथे, र जुन क्रियाकलाप उनीहरूले गरिराखेका छन्, त्यो सबै अल्लाहले आफ्नो घेरामा लिनेवाला छ ।

وَاِذْ زَيَّنَ لَهُمُ الشَّيْطٰنُ اَعْمَالَهُمْ وَقَالَ لَا غَالِبَ لَكُمُ الْيَوْمَ مِنَ النَّاسِ وَاِنِّيْ جَارٌ لَّكُمْ ۚ فَلَمَّا تَرَآءَتِ الْفِئَتٰنِ نَكَصَ عَلٰى عَقِبَيْهِ وَقَالَ اِنِّيْ بَرِيْٓءٌ مِّنْكُمْ اِنِّيْٓ اَرٰى مَا لَا تَرَوْنَ اِنِّيْٓ اَخَافُ اللّٰهَ ؕ وَاللّٰهُ شَدِيْدُ الْعِقَابِ ﴿٤٨﴾

४८) र जब शैतानले उनीहरूको कर्म उनीहरूलाई आकर्षक रूपमा देखाइरहेको थियो र भनी रहेको थियो कि आज मानिसहरूमध्ये कोही पनि तिमीमाथि अधिपत्य जमाउन सक्दैन, र म स्वयं पनि तिम्रो समर्थक हूँ । किन्तु जब दुवै समूह आमुन्ने-सामुन्ने आए तब आफ्नो मुन्टो फर्काएर पछि हट्यो र भन्यो (शैतानले) म तिमी भन्दा भिन्न हूँ । मैले त्यो देखि राखेको छु जुन तिमीले देखिराखेका छैनौ । म अल्लाहसित डराउन्छु र अल्लाह कठोर यातना दिनेवाला छ ।

اِذْ يَقُوْلُ الْمُنٰفِقُوْنَ وَالَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ غَرَّ هٰٓؤُلَآءِ دِيْنُهُمْ ؕ وَمَنْ يَّتَوَكَّلْ عَلَى اللّٰهِ فَاِنَّ اللّٰهَ عَزِيْزٌ حَكِيْمٌ ﴿٤٩﴾

४९) जबकि कपटिहरूले भनिराखेका थिए र उनीहरू पनि जसका हृदयमा रोग थियो कि उनीहरूलाई त उनीहरूकै धर्मले धोकामा पारिदिएको छ । र जसले पनि अल्लाहमाथि भरोसा गर्छ, त निश्चय नै अल्लाह अत्यन्त शक्तिशाली र तत्वदर्शी छ ।

وَلَوْ تَرَىٰٓ إِذْ يَتَوَفَّى ٱلَّذِينَ كَفَرُوا۟ ٱلْمَلَٰٓئِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَٰرَهُمْ وَذُوقُوا۟ عَذَابَ ٱلْحَرِيقِ ﴿٥٠﴾

५०) र काश तिमीले देख्यौ जब फरिश्ताहरूले क़ाफिरहरूको प्राण निकाल्छन् । उनीहरूले तिनीहरूको मुख र पिठ्यूमा प्रहार गर्दछन् (र भन्दछन्): तिमी पोलिनुको यातना चाख ।

ذَٰلِكَ بِمَا قَدَّمَتْ أَيْدِيكُمْ وَأَنَّ ٱللَّهَ لَيْسَ بِظَلَّٰمٍ لِّلْعَبِيدِ ﴿٥١﴾

५१) यो ती क्रियाकलापहरूको कारण हो, जुन कि तिम्रा हातले अगाडि नै पठाइसकेका छन् । निःसन्देह अल्लाह आफ्ना भक्तहरूमाथि अत्याचार गर्नेवाला छैन ।

كَدَأْبِ ءَالِ فِرْعَوْنَ ۙ وَٱلَّذِينَ مِن قَبْلِهِمْ ۚ كَفَرُوا۟ بِـَٔايَٰتِ ٱللَّهِ فَأَخَذَهُمُ ٱللَّهُ بِذُنُوبِهِمْ ۗ إِنَّ ٱللَّهَ قَوِىٌّ شَدِيدُ ٱلْعِقَابِ ﴿٥٢﴾

५२) यिनीहरूको त्यस्तै अवस्था भयो जस्तो कि फिरऔनका मानिसहरू र उनीहरू भन्दा पहिलाका मानिसहरूको भयो । उनीहरूले अल्लाहका आयातहरूलाई इन्कार गरे अनि अल्लाहले उनीहरूलाई उनीहरूका पापका कारण समातिहाल्यो । निःसन्देह अल्लाह शक्तिशाली र कठोर यातना दिनेवाला छ ।

ذَٰلِكَ بِأَنَّ ٱللَّهَ لَمْ يَكُ مُغَيِّرًا نِّعْمَةً أَنْعَمَهَا عَلَىٰ قَوْمٍ حَتَّىٰ يُغَيِّرُوا۟ مَا بِأَنفُسِهِمْ ۙ وَأَنَّ ٱللَّهَ سَمِيعٌ عَلِيمٌ ﴿٥٣﴾

५३) यो यसकारण भयो कि अल्लाह यस्तो छैन कि कुनै कौममाथि कुनै अनुग्रह गरेर, फेरि त्यसलाई बदलिदेओस् जबसम्मकि आफ्नो अवस्थालाई उनीहरूले नबदलुन्, जुन तिनीहरूको आफ्नो थियो र यो कि अल्लाह सबैकुरा सुन्नेवाला सर्वज्ञ छ ।

كَدَأْبِ ءَالِ فِرْعَوْنَ ۙ وَٱلَّذِينَ مِن قَبْلِهِمْ ۚ كَذَّبُوا۟ بِـَٔايَٰتِ رَبِّهِمْ فَأَهْلَكْنَٰهُم بِذُنُوبِهِمْ

५४) (तिनीहरूको दशा) फिरऔनीहरू र उनीभन्दा पहिलेका मानिसहरूको

وَاَغْرَقْنَاۤ اٰلَ فِرْعَوْنَ ۚ وَكُلٌّ كَانُوْا ظٰلِمِيْنَ ﴿٥٤﴾

जस्तो भयो । उनीहरूले आफ्ना पालनकर्ताका कुराहरूलाई भूठ्लाए त हामीले उनीहरूलाई उनीहरूकै पापको बदलामा नष्ट गरिहाल्यौ र फिरऔनीहरूलाई डुबाइदियौं । यी सबै अत्याचारी थिए ।

اِنَّ شَرَّ الدَّوَآبِّ عِنْدَ اللّٰهِ الَّذِيْنَ كَفَرُوْا فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٥٥﴾

५५) निश्चय नै सबभन्दा नराम्रा प्राणी अल्लाहको दृष्टिमा ती मानिसहरू हुन्, जसले इन्कार गर्दछन् । अनि उनीहरूहले ईमान ल्याउँदैनन् ।

اَلَّذِيْنَ عٰهَدْتَّ مِنْهُمْ ثُمَّ يَنْقُضُوْنَ عَهْدَهُمْ فِيْ كُلِّ مَرَّةٍ وَّهُمْ لَا يَتَّقُوْنَ ﴿٥٦﴾

५६) जसबाट तपाईले वचन लिनुभयो तैपनि उनीहरू हरेक पटक आफ्ना वचन भङ्ग गरिदिन्छन् र उनीहरू एकदमै संयम गर्दैनन् ।

فَاِمَّا تَثْقَفَنَّهُمْ فِى الْحَرْبِ فَشَرِّدْ بِهِمْ مَّنْ خَلْفَهُمْ لَعَلَّهُمْ يَذَّكَّرُوْنَ ﴿٥٧﴾

५७) तसर्थः जहिलेपनि तिमी उनीमाथि युद्धमा नियन्त्रण पाउँछौ, तब उनीहरूमाथि यस्तो प्रहार गर कि उनीहरूको पछिका पनि भागिहालुन्, हुन सक्छ (यसबाट) उनीहरूले शिक्षा ग्रहण गरुन् ।

وَاِمَّا تَخَافَنَّ مِنْ قَوْمٍ خِيَانَةً فَانْۢبِذْ اِلَيْهِمْ عَلٰى سَوَآءٍ ۭ اِنَّ اللّٰهَ لَا يُحِبُّ الْخَآئِنِيْنَ ﴿٥٨﴾

५८) र यदि तिमीलाई कुनै समुदायसित विश्वासघातको आशंका छ भने तिमी पनि उस्तै किसिमले त्यस्ता मानिसहरूको साथमा भएको सन्धिलाई भङ्ग गरिदेऊ । अल्लाहलाई विश्वासघात गर्नेहरू प्रिय छैनन् ।

وَلَا يَحْسَبَنَّ الَّذِيْنَ كَفَرُوْا سَبَقُوْا ۭ اِنَّهُمْ لَا يُعْجِزُوْنَ ﴿٥٩﴾

५९) क़ाफिरहरूले यो नठानुन् कि उनीहरू उम्के । उनीहरू नियन्त्रणभन्दा बाहिर जान सक्दैनन् ।

وَأَعِدُّوا لَهُم مَّا اسْتَطَعْتُم مِّن قُوَّةٍ وَمِن رِّبَاطِ الْخَيْلِ تُرْهِبُونَ بِهِ عَدُوَّ اللَّهِ وَعَدُوَّكُمْ وَآخَرِينَ مِن دُونِهِمْ لَا تَعْلَمُونَهُمُ اللَّهُ يَعْلَمُهُمْ ۚ وَمَا تُنفِقُوا مِن شَيْءٍ فِي سَبِيلِ اللَّهِ يُوَفَّ إِلَيْكُمْ وَأَنتُمْ لَا تُظْلَمُونَ ﴿٦٠﴾

६०) तिमी आफ्नो शक्तिले भ्याएसम्म, उनीहरूको मुकाबला निम्ति बल र घोडाहरू तयार राख, ताकि यसद्वारा तिमीहरूले अल्लाहका शत्रुहरू र आफ्ना शत्रुहरू र यिनीहरूका अतिरिक्त अन्य ती मानिसहरूलाई पनि भयभीत पार्न सक्दछौ जसलाई तिमी जान्दैनौ । अल्लाह उनीहरूलाई जान्दछ र अल्लाहको मार्गमा तिमीले जे-जति खर्च गर्नेछौ, त्यो तिमीलाई पूर्णरूपले प्रदान गरिनेछ र तिम्रो हक मारिने छैन ।

وَإِن جَنَحُوا لِلسَّلْمِ فَاجْنَحْ لَهَا وَتَوَكَّلْ عَلَى اللَّهِ ۚ إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٦١﴾

६१) यदि उनीहरू सम्झौताको इच्छा गर्दछन् भने तिमी पनि सम्झौताका लागि तयार भइहाल र अल्लाहमाथि भरोसा गर । निःसन्देह ऊ सबैकुरा सुन्नेवाला, जान्नेवाला छ ।

وَإِن يُرِيدُوا أَن يَخْدَعُوكَ فَإِنَّ حَسْبَكَ اللَّهُ ۚ هُوَ الَّذِي أَيَّدَكَ بِنَصْرِهِ وَبِالْمُؤْمِنِينَ ﴿٦٢﴾

६२) यदि उनीहरू तिमीसित विश्वासघात गर्न चाहन्छन् भने अल्लाह तिमीलाई पर्याप्त छ, उसैले आफ्नो सहायताले र मोमिनहरूबाट तिम्रो समर्थन गरेको छ ।

وَأَلَّفَ بَيْنَ قُلُوبِهِمْ ۚ لَوْ أَنفَقْتَ مَا فِي الْأَرْضِ جَمِيعًا مَّا أَلَّفْتَ بَيْنَ قُلُوبِهِمْ وَلَٰكِنَّ اللَّهَ أَلَّفَ بَيْنَهُمْ ۚ إِنَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٦٣﴾

६३) उनीहरूका हृदयलाई आपसी प्रेमले पनि उसैले जोडेको हो । यदि तिमीले धर्तीमा भएका सबै कुरा खर्च गरेको भएपनि उनका हृदयलाई परस्पर जोड्न सक्दैनथ्यौ तर अल्लाहले नै तिनलाई आपसमा जोडिदियो । निश्चय नै त्यो सर्वशक्तिशाली, तत्वदर्शी छ ।

يَاأَيُّهَا النَّبِيُّ حَسْبُكَ اللَّهُ وَمَنِ اتَّبَعَكَ مِنَ الْمُؤْمِنِينَ ﴿٦٤﴾

६४) हे नबी ! तिम्रो लागि अल्लाह र तिम्रा ईमानवाला अनुयायीहरू नै प्रयाप्त छन् ।

يَاأَيُّهَا النَّبِيُّ حَرِّضِ الْمُؤْمِنِينَ عَلَى الْقِتَالِ ۚ إِن يَكُن مِّنكُمْ عِشْرُونَ صَابِرُونَ يَغْلِبُوا مِائَتَيْنِ ۚ وَإِن يَكُن مِّنكُم مِّائَةٌ يَغْلِبُوا أَلْفًا مِّنَ الَّذِينَ كَفَرُوا بِأَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُونَ ﴿٦٥﴾

६५) हे नबी ! ईमानवालाहरूलाई जिहादको निम्ति प्रेरित गर । यदि तिमीमध्ये बीसजना पनि धैर्यवान् छन् भने दुईसय जनामाथि प्रभावी हुनेछन् र यदि तिमीमध्ये एक सय हुन्छन् भने उनीहरू एक हज़ार काफिरहरूमाथि प्रभावी हुनेछन्, किनभने उनीहरू बुद्धिहीन हुन् ।

الْآنَ خَفَّفَ اللَّهُ عَنكُمْ وَعَلِمَ أَنَّ فِيكُمْ ضَعْفًا ۚ فَإِن يَكُن مِّنكُم مِّائَةٌ صَابِرَةٌ يَغْلِبُوا مِائَتَيْنِ ۚ وَإِن يَكُن مِّنكُمْ أَلْفٌ يَغْلِبُوا أَلْفَيْنِ بِإِذْنِ اللَّهِ ۗ وَاللَّهُ مَعَ الصَّابِرِينَ ﴿٦٦﴾

६६) अब अल्लाहले तिम्रो भार हल्का गर्दछ, उसलाई राम्ररी थाहा छ कि तिमीमा केही कमजोरी छ । तसर्थ यदि तिम्रा एक सयजना संयमी छन् भने उनीहरू दुई-सयमाथि प्रभावी रहनेछन् र यदि तिमीमध्ये यस्ता एक हज़ार जना हुन्छन् भने अल्लाहको आदेशले उनीहरू दुई-हजारमाथि प्रभावी रहनेछन् । र अल्लाह धैर्य गर्नेहरूको साथमा छ ।

مَا كَانَ لِنَبِيٍّ أَن يَكُونَ لَهُ أَسْرَىٰ حَتَّىٰ يُثْخِنَ فِي الْأَرْضِ ۚ تُرِيدُونَ عَرَضَ الدُّنْيَا وَاللَّهُ يُرِيدُ الْآخِرَةَ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٦٧﴾

६७) कुनै नबीको लागि यो उचित छैन कि उसको पासमा कैदी रहुन् जबसम्मकि धर्तीमा ठूलो रक्तपात हुँदैन । तिमी त संसारको धन चाहन्छौ, जबकि अल्लाहको इच्छा आख़िरतको छ । र अल्लाह सर्वशक्तिशाली, तत्वदर्शी छ ।

لَوْلَا كِتَٰبٌ مِّنَ ٱللَّهِ سَبَقَ لَمَسَّكُمْ فِيمَآ أَخَذْتُمْ عَذَابٌ عَظِيمٌ ٦٨

६८) अल्लाहले लेखेको कुरो अघिदेखि नै उपस्थित नभएको भए जे-जति तिमीले लिएका छौ, त्यसबापत तिमीलाई कुनै ठूलो यातना हुने थियो ।

فَكُلُوا۟ مِمَّا غَنِمْتُمْ حَلَٰلًا طَيِّبًا ۚ وَٱتَّقُوا۟ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ٦٩

६९) तसर्थः जे-जति वैध (हलाल) र पवित्र ग़नीमत (मालसमान) प्राप्त गरेका छौ, राम्रो सँग खाऊ र पिऊ र अल्लाहसित डराईराख । निश्चय नै अल्लाह बडो क्षमाशील, अत्यन्त दयावान् छ ।

يَٰٓأَيُّهَا ٱلنَّبِىُّ قُل لِّمَن فِىٓ أَيْدِيكُم مِّنَ ٱلْأَسْرَىٰٓ إِن يَعْلَمِ ٱللَّهُ فِى قُلُوبِكُمْ خَيْرًا يُؤْتِكُمْ خَيْرًا مِّمَّآ أُخِذَ مِنكُمْ وَيَغْفِرْ لَكُمْ ۗ وَٱللَّهُ غَفُورٌ رَّحِيمٌ ٧٠

७०) हे नबी ! जुन कैदीहरू तिम्रा कब्जामा छन्, उनीहरूसित भनिदेऊ : यदि अल्लाहले तिम्रा हृदयमा असल नियत देख्नेछ भने, जे-जति तिमीबाट लिइएको छ, त्यो भन्दा धेरै (उत्तम) कुरो तिमीलाई प्रदान गर्नेछ, अनि पाप पनि क्षमा गरिदिनेछ । र अल्लाह अत्यन्त क्षमाशील, दयावान् छँदैछ ।

وَإِن يُرِيدُوا۟ خِيَانَتَكَ فَقَدْ خَانُوا۟ ٱللَّهَ مِن قَبْلُ فَأَمْكَنَ مِنْهُمْ ۗ وَٱللَّهُ عَلِيمٌ حَكِيمٌ ٧١

७१) र यदि उनीहरूले तिमीसंग विश्वासघातको धारणा राख्दछन् भने यिनीहरू त यसभन्दा पहिले अल्लाहकै विश्वासघात गरिसकेकाछन्, अन्ततः तिनीहरूलाई (तिम्रो अधीनमा) पक्राउ गराई दिएको छ । अल्लाह सबै कुरा जान्नेवाला, बडो तत्वदर्शी छ ।

७२) जुन मानिसहरूले ईमान ल्याए र हिजरत(प्रवास) गरे र अल्लाहको मार्गमा आफ्ना जिउ-ज्यान र धन सम्पत्ति लगाएर धर्मयुद्ध गरे र जसले उनीहरूलाई शरण दिए, र सहायता गरे यी सबै परस्परमा एक-अर्काका मित्र हुन्, र जसले ईमान त ल्याएछन् तर हिजरत गरेनन्, उनीहरूको तिमीसित मित्रताको कुनै सम्बन्ध छैन, जबसम्म उनीहरू हिजरत गर्दैनन् । किन्तु यदि उनीहरूले धर्मको कुरामा तिमीसित सहायता माँग्छन् भने तिमीलाई अनिवार्य हुन जान्छ कि सहायता गर, मात्र यसबाहेक कि यो सहायता कुनै यस्तो क़ौमको मुकाबिलामा छ जोसित तिम्रो कुनै सन्धि छ । र तिमी जे-जति गर्छौ, त्यसलाई अल्लाह राम्ररी देख्दछ ।

إِنَّ الَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا بِأَمْوَالِهِمْ
وَأَنفُسِهِمْ فِي سَبِيلِ اللَّهِ وَالَّذِينَ آوَوا وَّنَصَرُوا
أُولَٰئِكَ بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ وَالَّذِينَ آمَنُوا
وَلَمْ يُهَاجِرُوا مَا لَكُم مِّن وَلَايَتِهِم مِّن شَيْءٍ
حَتَّىٰ يُهَاجِرُوا ۚ وَإِنِ اسْتَنصَرُوكُمْ فِي الدِّينِ
فَعَلَيْكُمُ النَّصْرُ إِلَّا عَلَىٰ قَوْمٍ بَيْنَكُمْ وَبَيْنَهُم
مِّيثَاقٌ ۗ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٧٢﴾

७३) र काफिरहरू आपसमा एक-अर्काका मित्र हुन् । यदि तिमीले यस्तो गर्दैनौ भने मुलुकमा उपद्रव र ठूलो फसाद फैलिने छ ।

وَالَّذِينَ كَفَرُوا بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ إِلَّا تَفْعَلُوهُ
تَكُن فِتْنَةٌ فِي الْأَرْضِ وَفَسَادٌ كَبِيرٌ ﴿٧٣﴾

७४) र जुन मानिसहरूले ईमान ल्याए र हिजरत गरे र अल्लाहको मार्गमा जेहाद गरे, र जसले शरण दिए र मद्दत पुऱ्याए, यिनै सच्चा मोमिन् हुन् । उनीहरूका लागि क्षमा र सम्मानित आजीविका छ ।

وَالَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا فِي
سَبِيلِ اللَّهِ وَالَّذِينَ آوَوا وَّنَصَرُوا أُولَٰئِكَ هُمُ
الْمُؤْمِنُونَ حَقًّا ۚ لَّهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٧٤﴾

وَالَّذِيْنَ اٰمَنُوْا مِنْۢ بَعْدُ وَهَاجَرُوْا وَجٰهَدُوْا مَعَكُمْ فَاُولٰٓئِكَ مِنْكُمْ ۚ وَاُولُوا الْاَرْحَامِ بَعْضُهُمْ اَوْلٰى بِبَعْضٍ فِيْ كِتٰبِ اللّٰهِ ۗ اِنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٧٥﴾

७५) र जुन मानिसहरूले, यसपछि ईमान ल्याए र हिजरत गरे र तिम्रो साथमा जिहाद गरे, त यिनीहरू पनि तिमीमध्येका हुन् । परन्तु अल्लाहको हुक्ममा हर नातेदार आपसमा एक अर्काभन्दा नजिक छन् । निश्चय नै अल्लाहलाई हरेक कुराको ज्ञान छ ।



# सूरतुत्तौबः-९



सूरतुत्तौबः मदनी हो, यसमा १२९ आयतहरू र १६ रुकूअ्हरू छन्

बَرَآءَةٌ مِّنَ اللّٰهِ وَرَسُوْلِهٖۤ اِلَى الَّذِيْنَ عٰهَدْتُّمْ مِّنَ الْمُشْرِكِيْنَ ؕ۝١

१) अल्लाह र उसको रसूलको तर्फबाट विरक्तिको घोषणा छ ती मुशिरकहरूको बारेमा जोसंग तिमीले सम्झौता र सन्धि गरेका थियौ ।

فَسِيْحُوْا فِي الْاَرْضِ اَرْبَعَةَ اَشْهُرٍ وَّاعْلَمُوْۤا اَنَّكُمْ غَيْرُ مُعْجِزِي اللّٰهِ ۙ وَاَنَّ اللّٰهَ مُخْزِي الْكٰفِرِيْنَ ۝٢

२) (हे मुशरिकहरू !) तिमी धर्तीमा (मुलुकमा) चार महीनासम्म हिंडडुल गरिहाल र जानीराख कि तिमी अल्लाहको नियन्त्रणभन्दा बाहिर जान सक्दैनौ, र यो (पनि याद रहोस्) कि अल्लाहले काफ़िरहरूलाई अपमानित गर्नेवाला छ ।

وَاَذَانٌ مِّنَ اللّٰهِ وَرَسُوْلِهٖۤ اِلَى النَّاسِ يَوْمَ الْحَجِّ الْاَكْبَرِ اَنَّ اللّٰهَ بَرِيْٓءٌ مِّنَ الْمُشْرِكِيْنَ ۙ۬ وَرَسُوْلُهٗ ؕ فَاِنْ تُبْتُمْ فَهُوَ خَيْرٌ لَّكُمْ ۚ وَاِنْ تَوَلَّيْتُمْ فَاعْلَمُوْۤا اَنَّكُمْ غَيْرُ مُعْجِزِي اللّٰهِ ؕ وَبَشِّرِ الَّذِيْنَ كَفَرُوْا بِعَذَابٍ اَلِيْمٍ ۙ۝٣

३) र अल्लाह र उसको रसूलको तर्फबाट मानिसहरूलाई ठूलो हजको दिन स्पष्ट जानकारी छ कि अल्लाह र उसको रसूल पनि मुशिरकहरूबाट बिरक्त छन्, र यदि अहिले पनि तिमीले प्रायश्चित गर्छौ भने तिम्रो निम्ति राम्रो हुनेछ र यदि तिमी मान्दैनौ भने जानिहाल कि तिमी अल्लाहलाई कदापि हराउन सक्दैनौ र काफिरहरूलाई कष्टदायक सजायको समाचार सुनाइदिनुस् ।

اِلَّا الَّذِيْنَ عٰهَدْتُّمْ مِّنَ الْمُشْرِكِيْنَ ثُمَّ لَمْ يَنْقُصُوْكُمْ شَيْـًٔا وَّلَمْ يُظَاهِرُوْا عَلَيْكُمْ اَحَدًا فَاَتِمُّوْۤا

४) तर ती मुशिरकहरू बाहेक जोसित तिम्रो सन्धि भइसकेको छ, र

إِلَيْهِمْ عَهْدَهُمْ إِلَىٰ مُدَّتِهِمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَّقِينَ ﴿٤﴾

उनीहरूले तिमीलाई अलिकति पनि कुनै प्रकारको नोक्सानी पुऱ्याएका छैनन्, न त कसैलाई तिम्रो विरोधमा मद्दत गरेका छन्, त तिमी पनि उनीहरूको सन्धिको अवधि उनीहरूको साथमा पुरा गर, अल्लाह आत्मसंयमीहरूलाई मित्र ठान्दछ ।

فَإِذَا انسَلَخَ الْأَشْهُرُ الْحُرُمُ فَاقْتُلُوا الْمُشْرِكِينَ حَيْثُ وَجَدتُّمُوهُمْ وَخُذُوهُمْ وَاحْصُرُوهُمْ وَاقْعُدُوا لَهُمْ كُلَّ مَرْصَدٍ ۚ فَإِن تَابُوا وَأَقَامُوا الصَّلَاةَ وَآتَوُا الزَّكَاةَ فَخَلُّوا سَبِيلَهُمْ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٥﴾

५) अनि पवित्र महीनाहरू बितिसके पछि, मुश्रिकहरूलाई जहाँसुकै फेला परे मारिहाल, उनीहरूलाई समात र उनीहरूलाई घेरामा लिइहाल र उनको लागि प्रत्येक घाटीमा बसिराख । तर यदि तिनीहरू प्रायश्चित गर्छन् र नमाज़ कायम गर्छन् र ज़कात दिन्छन् भने उनीहरूको बाटो छाडिदेऊ । निश्चय नै अल्लाह बडो क्षमाशील, दयावान् छ ।

وَإِنْ أَحَدٌ مِّنَ الْمُشْرِكِينَ اسْتَجَارَكَ فَأَجِرْهُ حَتَّىٰ يَسْمَعَ كَلَامَ اللَّهِ ثُمَّ أَبْلِغْهُ مَأْمَنَهُ ۚ ذَٰلِكَ بِأَنَّهُمْ قَوْمٌ لَّا يَعْلَمُونَ ﴿٦﴾

६) र यदि मुश्रिकहरूमध्ये कसैले तिमीसँग शरण माँगदछ भने तिमीले उसलाई शरण दिइहाल, ताकि उसले अल्लाहको बाणी सुनिहालोस् । त्यस पश्चात उसलाई उसको सुरक्षित स्थानमा पुऱ्याइदेऊ, किनभने उनीहरू त्यस्ता मानिसहरू हुन् जो अज्ञानी छन् ।

كَيْفَ يَكُونُ لِلْمُشْرِكِينَ عَهْدٌ عِندَ اللَّهِ وَعِندَ رَسُولِهِ إِلَّا الَّذِينَ عَاهَدتُّمْ عِندَ الْمَسْجِدِ

७) मुश्रिकहरूको कुनै सन्धिको जिम्मेवारी अल्लाह र त्यसको

الْحَرَامِ ۚ فَمَا اسْتَقَامُوا لَكُمْ فَاسْتَقِيمُوا لَهُمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُتَّقِينَ ﴿٧﴾

रसूलमाथि कसरी बाँकी रहन सक्छ ? तर उनीहरूको कुरा यसबाट अलग्गै छ, जसले तिमीसित मस्जिदे हरामको (कअ्बा) समीपमा गरेका थिए, जबसम्म उनीहरू तिमीसित सन्धिको निर्वाह गर्दछन्, तिमी पनि उनीहरूसित निर्वाह गर । निश्चय नै अल्लाह सत्यनिष्ठहरूलाई प्रेम गर्दछ ।

كَيْفَ وَإِن يَظْهَرُوا عَلَيْكُمْ لَا يَرْقُبُوا فِيكُمْ إِلًّا وَلَا ذِمَّةً ۚ يُرْضُونَكُم بِأَفْوَاهِهِمْ وَتَأْبَىٰ قُلُوبُهُمْ وَأَكْثَرُهُمْ فَاسِقُونَ ﴿٨﴾

८) उनीहरूको वाचाको के विश्वास गर्न सकिन्छ ? यदि यिनीहरू तिमीमाथि प्रभावी हुन्छन् भने न त निकटताको मर्यादा गर्दछन् न सम्झौता र वचनको । आफ्नो मुखले त तिमीलाई खुशी पार्दछन् तर उनको हृदयले मान्दैनन् । उनीहरूमध्ये धेरैजसो अवज्ञाकारी छन् ।

اشْتَرَوْا بِآيَاتِ اللَّهِ ثَمَنًا قَلِيلًا فَصَدُّوا عَن سَبِيلِهِ ۚ إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ﴿٩﴾

९) उनीहरूले अल्लाहका आयतहरूलाई थोरै मूल्यमा बेची दिएका छन् र उसको मार्गबाट रोकदैछन् । त्यो साह्रै नराम्रा छन् जसले यो गरिराखेका छन् ।

لَا يَرْقُبُونَ فِي مُؤْمِنٍ إِلًّا وَلَا ذِمَّةً ۚ وَأُولَٰئِكَ هُمُ الْمُعْتَدُونَ ﴿١٠﴾

१०) यिनीहरू त कुनै मोमिनको बारेमा न त नाता रिश्तालाई विचार गर्दछन् र न कुनै वचनलाई । र यी सीमा नाघ्नेहरू नै हुन् ।

فَإِن تَابُوا وَأَقَامُوا الصَّلَاةَ وَآتَوُا الزَّكَاةَ فَإِخْوَانُكُمْ فِي الدِّينِ ۗ وَنُفَصِّلُ الْآيَاتِ لِقَوْمٍ يَعْلَمُونَ ﴿١١﴾

११) अहिले पनि यिनीहरूले प्रायश्चित गर्छन् र नियमित नमाज़ कायम गर्दछन् र ज़कात दिन्छन्, त धर्ममा

तिम्रा दाजुभाइ हुन्। र हामी त जान्ने, बुझ्नेहरूका लागि आफ्ना आयत प्रष्ट रूपमा बर्णन गरिराखेका छौं ।

१२) र यदि यिनीहरू सन्धि-सम्झौता पश्चात पनि आफ्ना शपथहरू तोड्दछन् र तिम्रो धर्मको खिल्ली उडाउँछन् भने तिमी पनि यी (अधर्मका) नायकहरूसित युद्ध गर । उनीहरूका शपथ केही होइन, सम्भव छ कि यसप्रकार उनीहरूले आफ्नो क्रियाकलापको परित्याग गरुन् ।

وَإِنْ نَّكَثُوٓا أَيْمَانَهُم مِّنۢ بَعْدِ عَهْدِهِمْ وَطَعَنُوا فِي دِينِكُمْ فَقَاتِلُوٓا أَئِمَّةَ الْكُفْرِ ۙ إِنَّهُمْ لَآ أَيْمَانَ لَهُمْ لَعَلَّهُمْ يَنتَهُونَ ﴿١٢﴾

१३) तिमीहरू युद्ध गर्न किन तयार हुँदैनौ, जसले आफ्ना शपथलाई तोडे र पैग़म्बरलाई घरबाट निकाल्ने प्रयासमा छन् । र स्वयं नै पहिलोपटक उनीहरूले तिमीहरू विरुद्ध (युद्धको) पहल गरे । के तिमी उनीसित डर मान्छौ ? यदि तिमी मोमिन् हौ भने यसको धेरै हक़दार अल्लाह छ कि तिमी उनीसित डर मान ।

أَلَا تُقَاتِلُونَ قَوْمًا نَّكَثُوٓا أَيْمَانَهُمْ وَهَمُّوا بِإِخْرَاجِ الرَّسُولِ وَهُم بَدَءُوكُمْ أَوَّلَ مَرَّةٍ ۚ أَتَخْشَوْنَهُمْ ۚ فَاللَّهُ أَحَقُّ أَن تَخْشَوْهُ إِن كُنتُم مُّؤْمِنِينَ ﴿١٣﴾

१४) उनीहरूसित तिमी युद्ध गर । अल्लाहले तिम्रो हातबाट उनीहरूलाई यातना दिनेछ, र उनीहरूलाई निराश र अपमानित गर्नेछ । र उनीहरूको मुक़ाबिलामा उसले तिम्रो सहायता गर्नेछ, र ईमानवालारुका हृदयलाई शीतल गर्नेछ ।

قَاتِلُوهُمْ يُعَذِّبْهُمُ اللَّهُ بِأَيْدِيكُمْ وَيُخْزِهِمْ وَيَنصُرْكُمْ عَلَيْهِمْ وَيَشْفِ صُدُورَ قَوْمٍ مُّؤْمِنِينَ ﴿١٤﴾

وَيُذْهِبْ غَيْظَ قُلُوبِهِمْ ۗ وَيَتُوبُ اللَّهُ عَلَىٰ مَن يَشَاءُ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١٥﴾

१५) र उनीहरूका हृदयको दुःख र क्रोध हटाउनेछ र अल्लाह जसलाई चाहन्छ त्यसमाथि दयादृष्टि राख्दछ । र अल्लाह सर्वज्ञाता, तत्वदर्शी छ ।

أَمْ حَسِبْتُمْ أَن تُتْرَكُوا وَلَمَّا يَعْلَمِ اللَّهُ الَّذِينَ جَاهَدُوا مِنكُمْ وَلَمْ يَتَّخِذُوا مِن دُونِ اللَّهِ وَلَا رَسُولِهِ وَلَا الْمُؤْمِنِينَ وَلِيجَةً ۚ وَاللَّهُ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿١٦﴾

१६) के तिमीले यो भन्नठान्दछौ कि तिमी छाडिदिइनेछौ ?, हुनत अल्लाहले अहिले सम्म तिमीमध्ये तिनीहरूलाई प्रतिष्ठित बनाएको छैन, जो मुजाहिद (धर्मयुद्ध गर्ने व्यक्ति) छन् र जसले अल्लाह, उसको रसूल र मोमिन्हरू बाहेक कसैलाई घनिष्ट मित्र बनाएन । र अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलाप बारे जान्दछ ।

مَا كَانَ لِلْمُشْرِكِينَ أَن يَعْمُرُوا مَسَاجِدَ اللَّهِ شَاهِدِينَ عَلَىٰ أَنفُسِهِم بِالْكُفْرِ ۚ أُولَٰئِكَ حَبِطَتْ أَعْمَالُهُمْ وَفِي النَّارِ هُمْ خَالِدُونَ ﴿١٧﴾

१७) यो उचित छैन कि मुश्रिकहरूले अल्लाहका मस्जिदहरूलाई आबाद गरुन् किनभने उनीहरू स्वयं आफ्नै बिरुद्ध कुफ्रको साक्षी भइराखेका छन्, उनीहरूका सबै कर्म बर्बाद र निरर्थक छन् । र उनीहरू स्थाई रूपमा नर्कबासी हुन् ।

إِنَّمَا يَعْمُرُ مَسَاجِدَ اللَّهِ مَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَأَقَامَ الصَّلَاةَ وَآتَى الزَّكَاةَ وَلَمْ يَخْشَ إِلَّا اللَّهَ ۖ فَعَسَىٰ أُولَٰئِكَ أَن يَكُونُوا مِنَ الْمُهْتَدِينَ ﴿١٨﴾

१८) अल्लाहका मस्जिदहरूको शान र अबादीत उनीहरूको भागमा परेको छ जसले अल्लाह र अन्तिम दिनमाथि ईमान राख्दछन् नमाज़ क़ायम गर्दछन् र ज़कात दिन्छन् र अल्लाह बाहेक कसैसित डरेनन् । अतः आशा छ यिनै मानिसहरू निश्चय नै सोझो मार्ग पाउनेवाला हुनेछन् ।

أَجَعَلْتُمْ سِقَايَةَ الْحَاجِّ وَعِمَارَةَ الْمَسْجِدِ الْحَرَامِ كَمَنْ آمَنَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَجَاهَدَ فِي سَبِيلِ اللَّهِ ۚ لَا يَسْتَوُونَ عِندَ اللَّهِ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿١٩﴾

१९) के तिमीले हाजीहरूलाई पानी खुवाउनु र मस्जिदे हरामको सेवा गर्नुलाई अल्लाह र अन्तिम दिनमाथि ईमान र अल्लाहको मार्गमा युद्ध गर्नेहरूका समान ठानेको छौ यो अल्लाहको नजिक एक समान छैनन् र अल्लाह अत्याचारीहरूलाई मार्गदर्शन गर्दैन ।

الَّذِينَ آمَنُوا وَهَاجَرُوا وَجَاهَدُوا فِي سَبِيلِ اللَّهِ بِأَمْوَالِهِمْ وَأَنفُسِهِمْ أَعْظَمُ دَرَجَةً عِندَ اللَّهِ ۚ وَأُولَٰئِكَ هُمُ الْفَائِزُونَ ﴿٢٠﴾

२०) जुन मानिसहरूले ईमान ल्याए, हिजरत गरे, र अल्लाहको मार्गमा आफ्ना माल र ज्यानले जिहाद गरे, अल्लाह कहाँ तिनीहरूको ओहदा धेरै ठूलो छ ती नै सफलता प्राप्त गर्नेवाला हुन् ।

يُبَشِّرُهُمْ رَبُّهُم بِرَحْمَةٍ مِّنْهُ وَرِضْوَانٍ وَجَنَّاتٍ لَّهُمْ فِيهَا نَعِيمٌ مُّقِيمٌ ﴿٢١﴾

२१) उनीहरूलाई उनीहरूको पालनकर्ताले आफ्नो दयालुता, प्रसन्नता र स्वर्गको शुभ समाचार दिन्छ, जसमा उनीहरूका निम्ति स्थायी सुख सामाग्री छन् ।

خَالِدِينَ فِيهَا أَبَدًا ۚ إِنَّ اللَّهَ عِندَهُ أَجْرٌ عَظِيمٌ ﴿٢٢﴾

२२) त्यहाँ तिनीहरू सधैं रहने छन् । निःसन्देह अल्लाहको पासमा ठूलो पारितोषिक छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَتَّخِذُوا آبَاءَكُمْ وَإِخْوَانَكُمْ أَوْلِيَاءَ إِنِ اسْتَحَبُّوا الْكُفْرَ عَلَى الْإِيمَانِ ۚ وَمَن يَتَوَلَّهُم مِّنكُمْ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿٢٣﴾

२३) हे ईमानवालाहरू ! आफ्ना पिता र आफ्ना दाजुभाइहरूलाई मित्र नबनाऊ यदि उनीहरूले ईमानभन्दा कुफ्रलाई धेरै प्रिय ठान्दछन् । तिमीमध्ये जसले पनि उनीहरूलाई आफ्नो मित्र बनाउँछौ, त्यस्ता मानिस पूरा अत्याचारी हुनेछ ।

قُلْ إِنْ كَانَ آبَاؤُكُمْ وَأَبْنَاؤُكُمْ وَإِخْوَانُكُمْ
وَأَزْوَاجُكُمْ وَعَشِيرَتُكُمْ وَأَمْوَالٌ اقْتَرَفْتُمُوهَا
وَتِجَارَةٌ تَخْشَوْنَ كَسَادَهَا وَمَسَاكِنُ
تَرْضَوْنَهَا أَحَبَّ إِلَيْكُمْ مِنَ اللَّهِ وَرَسُولِهِ
وَجِهَادٍ فِي سَبِيلِهِ فَتَرَبَّصُوا حَتَّىٰ يَأْتِيَ اللَّهُ
بِأَمْرِهِ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الْفَاسِقِينَ ﴿٢٤﴾

२४) तपाईंले भनिदिनुस्: यदि तिम्रा पिता, तिम्रा छोराहरू, तिम्रा दाजुभाइहरू, तिम्रा पत्नीहरू र तिम्रा नातेदारहरू र सम्पत्ति, जुन तिमीले कमाएका छौ र कारोबार जसमा कमीबाट तिमीलाई भय हुन्छ र ती घरहरू, जसलाई तिमीले मन पराउँछौ, तिमीलाई अल्लाह र उसका रसूल र उसको मार्गमा जेहाद गर्नबाट अधिक प्रिय छन् भने अल्लाहले सजाय ल्याउन्जेल प्रतीक्षा गर । अल्लाह अवज्ञाकारीहरूलाई मार्गदर्शन् गर्दैन ।

لَقَدْ نَصَرَكُمُ اللَّهُ فِي مَوَاطِنَ كَثِيرَةٍ ۙ
وَيَوْمَ حُنَيْنٍ ۙ إِذْ أَعْجَبَتْكُمْ كَثْرَتُكُمْ فَلَمْ
تُغْنِ عَنْكُمْ شَيْئًا وَضَاقَتْ عَلَيْكُمُ الْأَرْضُ
بِمَا رَحُبَتْ ثُمَّ وَلَّيْتُمْ مُدْبِرِينَ ﴿٢٥﴾

२५) नि:सन्देह अल्लाहले तिमीलाई धेरै युद्धक्षेत्रहरूमा विजय प्रदान गरेको छ र "हुनैनका" युद्धको दिन पनि जबकि तिमीलाई आफ्नो ठूलो संख्यामा गौरव थियो, तर त्यो तिम्रो कुनै काम आएन बरु पृथ्वी आफ्नो विशालताको बावजूद तिम्रो निम्ति संकुचित भइहाल्यो । अनि तिमी पिठ्यू फर्काइ भाग्यौ ।

ثُمَّ أَنْزَلَ اللَّهُ سَكِينَتَهُ عَلَىٰ رَسُولِهِ وَعَلَى
الْمُؤْمِنِينَ وَأَنْزَلَ جُنُودًا لَمْ تَرَوْهَا وَعَذَّبَ
الَّذِينَ كَفَرُوا ۚ وَذَٰلِكَ جَزَاءُ الْكَافِرِينَ ﴿٢٦﴾

२६) अनि अल्लाहले आफ्नो रसूल र मोमिनहरूमाथि आफ्नो प्रशान्ति उतार्‍यो र यस्तो सेनाहरू पठायो जसलाई तिमीले देखिराखेका थिएनौ । र इन्कार गर्नेहरूलाई पूरा यातना दियो, र यही इन्कार गर्नेहरूका लागि बदला थियो ।

२७) अनि त्यस पश्चात पनि जसमाथि अल्लाहले चाहन्छ आफ्नो दया गर्छ । र अल्लाह अत्यन्त क्षमाशील र दयावान छ ।

ثُمَّ يَتُوبُ اللَّهُ مِنْ بَعْدِ ذَٰلِكَ عَلَىٰ مَنْ يَشَاءُ ۗ وَاللَّهُ غَفُورٌ رَحِيمٌ ﴿٢٧﴾

२८) हे ईमानवालाहरू ! नि:सन्देह मुश्रिकहरू बिल्कुलै अपवित्र छन् । अत: यस वर्ष पश्चात उनीहरू मस्जिदे हरामको समीप पनि आउन न पाउँन् । र यदि तिमीलाई निर्धनताको भय छ भने चाहेको खण्डमा अल्लाहले तिमीलाई आफ्नो अनुग्रहले समृद्ध गरिदिनेछ । निश्चय नै अल्लाह सबै कुरा जान्नेवाला, अत्यन्त तत्वदर्शी छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِنَّمَا الْمُشْرِكُونَ نَجَسٌ فَلَا يَقْرَبُوا الْمَسْجِدَ الْحَرَامَ بَعْدَ عَامِهِمْ هَٰذَا ۚ وَإِنْ خِفْتُمْ عَيْلَةً فَسَوْفَ يُغْنِيكُمُ اللَّهُ مِنْ فَضْلِهِ إِنْ شَاءَ ۚ إِنَّ اللَّهَ عَلِيمٌ حَكِيمٌ ﴿٢٨﴾

२९) अहले किताबका मानिसहरू मध्ये उनीहरूसित युद्ध गर, जो अल्लाहमाथि र अन्तिम दिनमाथि आस्था राख्दैनन् । अनि अल्लाह र उसको रसूलले अवैध ठहराएका कुरालाई अवैध ठहराउँदैनन् र न त सत्य धर्मको अनुपालन गर्दछन्, जबसम्मकि पराजित भई तिनीहरूले जिज़्या (सुरक्षाकर) तिर्दैनन् ।

قَاتِلُوا الَّذِينَ لَا يُؤْمِنُونَ بِاللَّهِ وَلَا بِالْيَوْمِ الْآخِرِ وَلَا يُحَرِّمُونَ مَا حَرَّمَ اللَّهُ وَرَسُولُهُ وَلَا يَدِينُونَ دِينَ الْحَقِّ مِنَ الَّذِينَ أُوتُوا الْكِتَابَ حَتَّىٰ يُعْطُوا الْجِزْيَةَ عَنْ يَدٍ وَهُمْ صَاغِرُونَ ﴿٢٩﴾

३०) यहुदी भन्दछन् : उजैर अल्लाहको छोरा हुन् । र ईसाई भन्दछन् : मसीह अल्लाहको छोरा हुन् । यो वचन उनीहरूको आफ्नै मुखको कुरा हो । यिनीहरूले ती मानिसहरूको कुरा गरिराखेका छन्

وَقَالَتِ الْيَهُودُ عُزَيْرٌ ابْنُ اللَّهِ وَقَالَتِ النَّصَارَى الْمَسِيحُ ابْنُ اللَّهِ ۖ ذَٰلِكَ قَوْلُهُمْ بِأَفْوَاهِهِمْ ۖ يُضَاهِئُونَ قَوْلَ الَّذِينَ كَفَرُوا مِنْ قَبْلُ ۚ قَاتَلَهُمُ اللَّهُ ۚ أَنَّىٰ يُؤْفَكُونَ ﴿٣٠﴾

जसले यसभन्दा अघि इन्कार गरिसकेका छन् । अल्लाहले यिनीहरूलाई खतम पार्नेछ ! अतः यिनीहरू कता लाग्दैछन्?

اِتَّخَذُوْٓا اَحْبَارَهُمْ وَرُهْبَانَهُمْ اَرْبَابًا مِّنْ دُوْنِ اللّٰهِ وَالْمَسِيْحَ ابْنَ مَرْيَمَ ۚ وَمَآ اُمِرُوْٓا اِلَّا لِيَعْبُدُوْٓا اِلٰهًا وَّاحِدًا ۚ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ سُبْحٰنَهٗ عَمَّا يُشْرِكُوْنَ ﴿٣١﴾

३१) यिनीहरूले अल्लाहलाई छाडी आफ्ना पादरी र सन्तहरू र मरियमको छोरा मसीहलाई आफ्ना पालनहार बनाए, जबकि यिनीहरूलाई मात्र एक एकलै अल्लाहकै उपासनाको आदेश दिइएको थियो, जस बाहेक कोही सत्य पूजनीय छैन । ऊ उसको साभ्केदार ठहराउने कार्यबाट मुक्त छ ।

يُرِيْدُوْنَ اَنْ يُّطْفِـُٔوْا نُوْرَ اللّٰهِ بِاَفْوَاهِهِمْ وَيَاْبَى اللّٰهُ اِلَّآ اَنْ يُّتِمَّ نُوْرَهٗ وَلَوْ كَرِهَ الْكٰفِرُوْنَ ﴿٣٢﴾

३२) उनीहरू चाहन्छन् कि अल्लाहको प्रकाशलाई आफ्नो मुखले निभाइदिउन्, तर अल्लाह आफ्नो प्रकाशलाई पूर्ण नगरि छाड्नेछैन, चाहे इन्कार गर्नेहरूलाई जतिसुकै अप्रिय लागोस् ।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ ۙ وَلَوْ كَرِهَ الْمُشْرِكُوْنَ ﴿٣٣﴾

३३) उसैले आफ्नो रसूललाई मार्गदर्शन र सत्य धर्म सहित पठाएको छ ताकि यसलाई अरु अन्य धर्महरूमाथि अधिपत्य प्रदान गरोस् । यद्यपि मुश्रिकहरूलाई नराम्रो लागोस् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ كَثِيْرًا مِّنَ الْاَحْبَارِ وَالرُّهْبَانِ لَيَاْكُلُوْنَ اَمْوَالَ النَّاسِ بِالْبَاطِلِ وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ ۗ وَالَّذِيْنَ يَكْنِزُوْنَ الذَّهَبَ وَالْفِضَّةَ وَلَا يُنْفِقُوْنَهَا فِيْ سَبِيْلِ اللّٰهِ ۙ فَبَشِّرْهُمْ بِعَذَابٍ اَلِيْمٍ ﴿٣٤﴾

३४) हे ईमानवालाहरू ! निःसन्देह अनेक धर्मज्ञाता र उपासकहरू यस्ता छन्, जसले मानिसहरूको माल अनुचित रूपमा खान्दछन्, र अल्लाहको मार्गबाट रोक्दछन्, र जसले सुन चाँदीका खजाना (एकत्र) गरिराख्दछन् ।

र अल्लाहको मार्गमा खर्च गर्दैनन्, त उनीहरूलाई कष्टदायक यातनाको समाचार पुऱ्याइदिनुस् ।

३५) जुन दिन त्यस सम्पत्तिलाई नर्कको आगोमा तताईन्छ अनि त्यसले उनीहरूका निधार र कोखा र पिठ्यूहरू डामिन्छन् (र भनिनेछ) : "यहि हो जुन तिमीले आफ्नो निम्ति खजाना बनाएर राखेका थियौ त आफ्ना खजानाहरूको स्वाद चाख ।"

يَّوْمَ يُحْمٰى عَلَيْهَا فِيْ نَارِ جَهَنَّمَ فَتُكْوٰى بِهَا جِبَاهُهُمْ وَجُنُوْبُهُمْ وَظُهُوْرُهُمْ ۗ هٰذَا مَا كَنَزْتُمْ لِاَنْفُسِكُمْ فَذُوْقُوْا مَا كُنْتُمْ تَكْنِزُوْنَ ﴿٣٥﴾

३६) अल्लाह निर महिनाहरूको संख्या त्यस दिनदेखि जब उसले आकाशहरू र धर्तीको सृष्टि गऱ्यो बाह्र छन् । उनीहरू मध्ये चार आदर र सम्मानका हुन्, यही सोझो धर्म हो । अतः तिमी यी महिनाहरूमा आफूमाथि अत्याचार नगर र मुश्रिकहरूसित सबैमिलेर जिहाद गर, जुन प्रकारले उनीहरू सबै मिलेर तिमीसित लड्दछन् । र जानिराख कि अल्लाह आत्मसंयमीहरूको साथमा छ ।

اِنَّ عِدَّةَ الشُّهُوْرِ عِنْدَ اللّٰهِ اثْنَا عَشَرَ شَهْرًا فِيْ كِتٰبِ اللّٰهِ يَوْمَ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ مِنْهَآ اَرْبَعَةٌ حُرُمٌ ۗ ذٰلِكَ الدِّيْنُ الْقَيِّمُ ۙ فَلَا تَظْلِمُوْا فِيْهِنَّ اَنْفُسَكُمْ وَقَاتِلُوا الْمُشْرِكِيْنَ كَآفَّةً كَمَا يُقَاتِلُوْنَكُمْ كَآفَّةً ۗ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿٣٦﴾

३७) महिनाहरूलाई अगाडि-पछाडि पार्नु कुफ्रमा एउटा बृद्धि हो, जसबाट तिनीहरू मार्ग-विचलनमा पर्छन् जुन् काफिर हुन् । कुनै वर्ष उनीहरूले त्यसलाई वैध ठहराउँछन् र कुनै वर्ष त्यसलाई अवैध ठहराउँदछन् ताकि अल्लाहका

اِنَّمَا النَّسِيْٓءُ زِيَادَةٌ فِي الْكُفْرِ يُضَلُّ بِهِ الَّذِيْنَ كَفَرُوْا يُحِلُّوْنَهٗ عَامًا وَّيُحَرِّمُوْنَهٗ عَامًا لِّيُوَاطِـُٔوْا عِدَّةَ مَا حَرَّمَ اللّٰهُ فَيُحِلُّوْا مَا حَرَّمَ اللّٰهُ ۗ زُيِّنَ لَهُمْ سُوْٓءُ اَعْمَالِهِمْ ۗ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الْكٰفِرِيْنَ ﴿٣٧﴾

महिनाहरूको संख्या पूरा गरिहालुन्, र यसप्रकार अल्लाहले अवैध गरिएकोलाई वैध ठहराइहालुन् । उनीहरूका आफ्ना नराम्रा कर्म राम्रा लाग्दछन् र अल्लाह इन्कार गर्नेहरूलाई सोभ्रो मार्ग देखाउँदैन ।

३८) हे ईमानवालाहरू ! तिमीलाई के भएको छ ? कि जब तिमीसित भनिन्छ अल्लाहको मार्गमा निस्क तब तिमी धर्तीमै टाँसिन खोज्छौ ? के तिमीले आख़िरतको अपेक्षा सांसारिक जीवनलाई नै बढी रुचायौ ? सांसारिक जीवनको सुख सामग्री त आखिरतको दाँजोमा नगन्य नै छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ مَا لَكُمْ إِذَا قِيلَ لَكُمُ ٱنفِرُوا۟ فِى سَبِيلِ ٱللَّهِ ٱثَّاقَلْتُمْ إِلَى ٱلْأَرْضِ ۚ أَرَضِيتُم بِٱلْحَيَوٰةِ ٱلدُّنْيَا مِنَ ٱلْءَاخِرَةِ ۚ فَمَا مَتَٰعُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا فِى ٱلْءَاخِرَةِ إِلَّا قَلِيلٌ ﴿٣٨﴾

३९) यदि तिमीले प्रस्थान गरेनौ भने अल्लाहले तिमीलाई दुःखद यातना दिनेछ र तिम्रो ठाउँमा अर्को समूहलाई ल्याउनेछ र तिमीले अल्लाहलाई कुनै नोक्सानी पुऱ्याउन सक्दैनौ । र अल्लाह हरेक कुरामाथि सामर्थ्यवान छ ।

إِلَّا تَنفِرُوا۟ يُعَذِّبْكُمْ عَذَابًا أَلِيمًا وَيَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ وَلَا تَضُرُّوهُ شَيْـًٔا ۗ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿٣٩﴾

४०) यदि तिमीले उनको (नबी मोहम्मद स.अ.) सहायता नगरे पनि अल्लाहले नै त्यसबेला पनि उनको सहायता गऱ्यो जबकि अनास्थावानहरूले उनलाई यस अवस्थामा निकाले (देशबाट) जबकि उनीमात्र दुईमध्येका दोस्रो थिए, र जबकि दुवै गुफामा

إِلَّا تَنصُرُوهُ فَقَدْ نَصَرَهُ ٱللَّهُ إِذْ أَخْرَجَهُ ٱلَّذِينَ كَفَرُوا۟ ثَانِىَ ٱثْنَيْنِ إِذْ هُمَا فِى ٱلْغَارِ إِذْ يَقُولُ لِصَٰحِبِهِۦ لَا تَحْزَنْ إِنَّ ٱللَّهَ مَعَنَا ۖ فَأَنزَلَ ٱللَّهُ سَكِينَتَهُۥ عَلَيْهِ وَأَيَّدَهُۥ بِجُنُودٍ لَّمْ تَرَوْهَا وَجَعَلَ كَلِمَةَ ٱلَّذِينَ كَفَرُوا۟ ٱلسُّفْلَىٰ ۗ وَكَلِمَةُ ٱللَّهِ هِىَ ٱلْعُلْيَا ۗ وَٱللَّهُ عَزِيزٌ حَكِيمٌ ﴿٤٠﴾

थिए । जब उनी आफ्नो साथीसित भनिराखेका थिए: शोकाकुल नहोऊ, अवश्य अल्लाह हाम्रो साथमा छ । अनि अल्लाहले उसमाथि आफ्नो तर्फबाट प्रशान्ति उतारे र यस्ता सेनाहरूद्वारा उनको मद्दत गऱ्यो, जसलाई तिमीले देख्न सकेनौ र उसले काफिरहरूको कुरा तल पारिदियो र बोली त अल्लाहकै उच्च र प्रिय रहन्छ । र अल्लाह सर्वशक्तिशाली, तत्वदर्शी छ ।

انْفِرُوا خِفَافًا وَثِقَالًا وَجَاهِدُوا بِأَمْوَالِكُمْ وَأَنفُسِكُمْ فِي سَبِيلِ اللَّهِ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٤١﴾

४१) हलुका र भारी दुवै अवस्थामा तिमीहरू निस्किहाल, र अल्लाहको मार्गमा आफ्नो माल, ज्यानका साथ जिहाद गर । यही नै तिम्रो निम्ति राम्रो छ, यदि तिमीमा ज्ञान छ ।

لَوْ كَانَ عَرَضًا قَرِيبًا وَسَفَرًا قَاصِدًا لَّاتَّبَعُوكَ وَلَٰكِن بَعُدَتْ عَلَيْهِمُ الشُّقَّةُ ۚ وَسَيَحْلِفُونَ بِاللَّهِ لَوِ اسْتَطَعْنَا لَخَرَجْنَا مَعَكُمْ يُهْلِكُونَ أَنفُسَهُمْ وَاللَّهُ يَعْلَمُ إِنَّهُمْ لَكَاذِبُونَ ﴿٤٢﴾

४२) यदि छिटै नै केही धन-सम्पत्ति प्राप्त हुने भए र यात्रा पनि सजिलो भएको भए, उनीहरू अवश्य नै तपाइँको पछि हिंडिहाल्थे, किन्तु मार्गको दूरी उनीहरूलाई कठिन र लामो लाग्यो । अब उनीहरू अल्लाहका शपथ खानेछन् कि, “यदि हामीमा यसको सामर्थ्य भएको भए अवश्य नै तपाइँको साथमा निस्कन्थ्यौं” । उनीहरूले स्वयं आफूलाई विनाशमा पारिराखेका छन् र अल्लाह राम्ररी जान्दछ कि निश्चय नै उनीहरू झूठा हुन् ।

عَفَا اللّٰهُ عَنْكَ لِمَ اَذِنْتَ لَهُمْ حَتّٰى يَتَبَيَّنَ لَكَ الَّذِيْنَ صَدَقُوْا وَتَعْلَمَ الْكٰذِبِيْنَ ﴿٤٣﴾

४३) अल्लाहले तिमीलाई माफ गरोस्, तिमीले उनीहरूलाई अनुमति किन दिइहाल्यौ, जबकि जो सच्चा छन्, उनीहरू तिम्रो अगाडि प्रकट भइहाल्थे र झूठालाई पनि तिमी जानीहाल्थ्यौ ।

لَا يَسْتَاْذِنُكَ الَّذِيْنَ يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ اَنْ يُّجَاهِدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ؕ وَاللّٰهُ عَلِيْمٌۢ بِالْمُتَّقِيْنَ ﴿٤٤﴾

४४) अल्लाह र क्यामतको दिनमाथि ईमान र विश्वास राख्नेहरूले त माल र ज्यानले जिहाद गर्नेबाट रोकनकोलागी तिमीसित कहिल्यै पनि अनुमति चाहँदैनन्, र अल्लाह आत्मसंयमीहरूलाई राम्ररी जान्दछ ।

اِنَّمَا يَسْتَاْذِنُكَ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَارْتَابَتْ قُلُوْبُهُمْ فَهُمْ فِيْ رَيْبِهِمْ يَتَرَدَّدُوْنَ ﴿٤٥﴾

४५) तिमीसित यो अनुमति त उनीहरूले नै चाहन्छन्, जसलाई न अल्लाहमाथि ईमान छ र न आख़िरतको दिनमा विश्वास छ, जसका हृदयमा शंकाहरू परिसकेका छन् र उनीहरू आफ्नै शंकामा परेशान छन् ।

وَلَوْ اَرَادُوا الْخُرُوْجَ لَاَعَدُّوْا لَهٗ عُدَّةً وَّلٰكِنْ كَرِهَ اللّٰهُ انْۢبِعَاثَهُمْ فَثَبَّطَهُمْ وَقِيْلَ اقْعُدُوْا مَعَ الْقٰعِدِيْنَ ﴿٤٦﴾

४६) यदि उनीहरूको विचार जिहादको निम्ति निस्कने भएको भए, उनीहरू यस यात्राको निम्ति सामाग्री तयार गरेर राख्थे, तर अल्लाहले उनीहरूको उठ्ने कामलाई रुचाएन । तसर्थ उसले उनीहरूलाई सक्रिय हुनाबट रोकिदियो । उनीहरूसित भनियो तिमीहरू बस्नेहरूको साथमा बसिराख ।

لَوْ خَرَجُوْا فِيْكُمْ مَّا زَادُوْكُمْ اِلَّا خَبَالًا وَّلَاۡاَوْضَعُوْا خِلٰلَكُمْ

४७) यदि तिनीहरू तिम्रो साथमा निस्केको भएपनि तिम्रो निम्ति

يَبۡغُونَكُمُ ٱلۡفِتۡنَةَ وَفِيكُمۡ سَمَّٰعُونَ لَهُمۡۗ وَٱللَّهُ عَلِيمُۢ بِٱلظَّٰلِمِينَ ﴿٤٧﴾

उत्पात बाहेक अरु कुनै कुराको वृद्धि गर्ने थिएनन् । बरु उनीहरूले तिम्रो माझमा निकै उपद्रव मचाउनकोलागि दौडधूप गर्दथे । तिमीहरूमा फूट पार्ने प्रयास गर्ने थिए। उनीहरूलाई मान्नेहरू स्वयं तिमीमा विद्यमान छन् । र अल्लाह अत्यचारीहरूलाई राम्रोसँग जान्दछ ।

لَقَدِ ٱبۡتَغَوُاْ ٱلۡفِتۡنَةَ مِن قَبۡلُ وَقَلَّبُواْ لَكَ ٱلۡأُمُورَ حَتَّىٰ جَآءَ ٱلۡحَقُّ وَظَهَرَ أَمۡرُ ٱللَّهِ وَهُمۡ كَٰرِهُونَ ﴿٤٨﴾

४८) यिनीहरू त यसभन्दा पहिला पनि उपद्रव मचाउँदै गरेका हुन् र तिम्रा विरुद्ध कार्य एवं कुराहरूलाई तलमाथि गरिराखेका थिए । यहाँसम्मकि हक (सच्चाई) आइपुग्यो र अल्लाहको आदेश प्रकट भयो, यद्यपि उनीहरूलाई अप्रिय नै लागिराख्यो ।

وَمِنۡهُم مَّن يَقُولُ ٱئۡذَن لِّي وَلَا تَفۡتِنِّيٓۚ أَلَا فِي ٱلۡفِتۡنَةِ سَقَطُواْۗ وَإِنَّ جَهَنَّمَ لَمُحِيطَةُۢ بِٱلۡكَٰفِرِينَ ﴿٤٩﴾

४९) उनीहरूमध्ये कोही त भन्दछ: मलाई अनुमति दिनुस् र मलाई उपद्रवमा नअल्झाउनुस् । सावधान रहनु कि उनीहरू त विवादमा परिसकेका छन्, र निश्चय नै नर्कले पनि इन्कार गर्नेहरूलाई घेरामा हाल्ने छ ।

إِن تُصِبۡكَ حَسَنَةٞ تَسُؤۡهُمۡۖ وَإِن تُصِبۡكَ مُصِيبَةٞ يَقُولُواْ قَدۡ أَخَذۡنَآ أَمۡرَنَا مِن قَبۡلُ وَيَتَوَلَّواْ وَّهُمۡ فَرِحُونَ ﴿٥٠﴾

५०) तपाईंलाई यदि राम्रो अवस्था आउँछ भने उनीहरूलाई नराम्रो लाग्छ र कुनै नराम्रो कुरा आइपुग्छ भने उनीहरू भन्छन्: "हामीले त आफ्नो काम पहिले नै राम्रो पारिसकेका थियौं ।" र उनीहरू खुशी भएर फर्कन्छन् ।

५१) तपाई भनिदिनुस् हामीलाई अल्लाहले हाम्रो निम्ति लेखिदिए बाहेक अरु कुनै कुरा पुग्न सक्दैन । उही हाम्रो स्वामी र योजनाकार हो । र ईमानवालाहरूलाई अल्लाहमाथि नै भरोसा गर्नुपर्छ ।

قُلْ لَّنْ يُّصِيْبَنَآ اِلَّا مَا كَتَبَ اللّٰهُ لَنَا ۚ هُوَ مَوْلٰىنَا ۚ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ﴿٥١﴾

५२) भनिदिनुस् तिमीहरू हाम्रो बारेमा जुन कुराको प्रतिक्षा गरिराखेका छौ, त्यो दुईटा भलाईहरूमध्ये एउटा हो र हामी तिम्रो हकमा प्रतीक्षा गर्दछौं कि या त अल्लाहले आफ्नो तर्फबाट कुनै यातना तिमीलाई देओस् वा हाम्रो हातबाट, तसर्थ एकातिर तिमी प्रतिक्षारत रह अर्कोतिर तिम्रो साथमा हामी पनि प्रतिक्षारत छौं ।

قُلْ هَلْ تَرَبَّصُوْنَ بِنَآ اِلَّآ اِحْدَى الْحُسْنَيَيْنِ ۗ وَنَحْنُ نَتَرَبَّصُ بِكُمْ اَنْ يُّصِيْبَكُمُ اللّٰهُ بِعَذَابٍ مِّنْ عِنْدِهٖٓ اَوْ بِاَيْدِيْنَا ۖ فَتَرَبَّصُوْٓا اِنَّا مَعَكُمْ مُّتَرَبِّصُوْنَ ﴿٥٢﴾

५३) भनिदिनुस् तिमी चाहे स्वेच्छापूर्वक खर्च गर वा अनिच्छापूर्वक, तिमीबाट केही पनि स्वीकार गरिने छैन । निःसन्देह तिमी अवज्ञाकारी हौ ।

قُلْ اَنْفِقُوْا طَوْعًا اَوْ كَرْهًا لَّنْ يُّتَقَبَّلَ مِنْكُمْ ۗ اِنَّكُمْ كُنْتُمْ قَوْمًا فٰسِقِيْنَ ﴿٥٣﴾

५४) उनीहरूको खर्च स्वीकार्य हुनमा यसबाहेक अरु कुनै कुरा बाधक छैन, कि उनीहरू अल्लाह र उसको रसूलको अवज्ञाकारी हुन् । र नमाज़मा धेरै अल्छी भएर आउँछन् र खर्च गर्नु पर्दापनि अनिच्छापूर्वक गर्दछन् ।

وَمَا مَنَعَهُمْ اَنْ تُقْبَلَ مِنْهُمْ نَفَقٰتُهُمْ اِلَّآ اَنَّهُمْ كَفَرُوْا بِاللّٰهِ وَبِرَسُوْلِهٖ وَلَا يَاْتُوْنَ الصَّلٰوةَ اِلَّا وَهُمْ كُسَالٰى وَلَا يُنْفِقُوْنَ اِلَّا وَهُمْ كٰرِهُوْنَ ﴿٥٤﴾

५५) अतः उनीहरूका माल र सन्तान तपाईंलाई आश्चर्यमा नपारुन् । अल्लाहको इच्छा यही छ कि उसले

فَلَا تُعْجِبْكَ اَمْوَالُهُمْ وَلَآ اَوْلَادُهُمْ ۗ اِنَّمَا يُرِيْدُ اللّٰهُ لِيُعَذِّبَهُمْ بِهَا فِى الْحَيٰوةِ الدُّنْيَا وَتَزْهَقَ اَنْفُسُهُمْ وَهُمْ كٰفِرُوْنَ ﴿٥٥﴾

उनीहरूलाई सांसारिक जीवनमा नै यातना देओस् र उनीहरूका प्राण कुफ्रकै अवस्थामा निस्कुन् ।

५६) यिनीहरू अल्लाहको शपथ खाई-खाई भन्दछन् कि यिनीहरू तिम्रो समूहका मानिस हुन् । जबकि यिनीहरू वास्तवमा तिम्रा होइनन्, कुरो मात्र यति छ कि यिनीहरू डरछेरुवाहरू हुन् ।

وَيَحْلِفُونَ بِاللّٰهِ إِنَّهُمْ لَمِنكُمْ وَمَا هُم مِّنكُمْ وَلٰكِنَّهُمْ قَوْمٌ يَفْرَقُونَ ﴿٥٦﴾

५७) यदि उनीहरूले कुनै शरण लिने ठाउँ वा कुनै गुफा वा कुनै टाउको लुकाउने ठाउँ, पाउँछन् भने त अवश्य नै त्यतातिर लगाम तोडी छिटोफर्कि भाग्नेछन् ।

لَوْ يَجِدُونَ مَلْجَأً أَوْ مَغَارَاتٍ أَوْ مُدَّخَلًا لَّوَلَّوْا إِلَيْهِ وَهُمْ يَجْمَحُونَ ﴿٥٧﴾

५८) उनीहरूमा केही त्यस्ता पनि छन् जसले खैरातको मालको वितरण सम्बन्धमा तपाईंमाथि लान्छना लगाउँछन्, यदि उनीहरूलाई यसबाट दिइयो भने खुशी हुन्छन् र यदि त्यसबाट दिइएन भने तुरुन्त क्रोधित हुन थाल्छन् ।

وَمِنْهُم مَّن يَلْمِزُكَ فِي الصَّدَقَاتِ فَإِنْ أُعْطُوا مِنْهَا رَضُوا وَإِن لَّمْ يُعْطَوْا مِنْهَا إِذَا هُمْ يَسْخَطُونَ ﴿٥٨﴾

५९) यदि यिनीहरू अल्लाह र रसूलले दिएको कुरामा खुशी रहन्थे र भन्थे कि अल्लाह हाम्रो निम्ति पर्याप्त छ, अल्लाहले हामीलाई आफ्नो अनुग्रहले दिनेछ र उसको रसूल पनि, हामी त अल्लाहबाटै आशा गर्नेवाला छौं ।

وَلَوْ أَنَّهُمْ رَضُوا مَا آتَاهُمُ اللّٰهُ وَرَسُولُهُ وَقَالُوا حَسْبُنَا اللّٰهُ سَيُؤْتِينَا اللّٰهُ مِن فَضْلِهِ وَرَسُولُهُ إِنَّا إِلَى اللّٰهِ رَاغِبُونَ ﴿٥٩﴾

६०) सद्क़ा (विशेष किसिमको दान) मात्र ग़रीब, र निमुखाहरूको निम्ति हुन्,

إِنَّمَا الصَّدَقَاتُ لِلْفُقَرَاءِ وَالْمَسَاكِينِ وَالْعَامِلِينَ عَلَيْهَا وَالْمُؤَلَّفَةِ قُلُوبُهُمْ وَفِي الرِّقَابِ

وَالْغَٰرِمِينَ وَفِي سَبِيلِ اللَّهِ وَابْنِ السَّبِيلِ ۖ فَرِيضَةً مِّنَ اللَّهِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٦٠﴾

र जो यस कामका लागि नियुक्त गरिएका हुन् र उनीहरूको लागि जसका हृदयलाई आकृष्ट गर्नु र रिझाउन अभिष्ट हुन्छ र दासहरूलाई मुक्त गराउनमा र ऋणिहरूको ऋण तिर्नलाई र अल्लाहको बाटोमा र यात्रीहरूको सहायताको निम्ति । यो अल्लाहको तर्फबाट पठाइएको अनिवार्य आदेश हो । अल्लाह सबैकुरा जान्नेवाला, अत्यन्त तत्वदर्शी छ ।

وَمِنْهُمُ الَّذِينَ يُؤْذُونَ النَّبِيَّ وَيَقُولُونَ هُوَ أُذُنٌ ۚ قُلْ أُذُنُ خَيْرٍ لَّكُمْ يُؤْمِنُ بِاللَّهِ وَيُؤْمِنُ لِلْمُؤْمِنِينَ وَرَحْمَةٌ لِّلَّذِينَ آمَنُوا مِنكُمْ ۚ وَالَّذِينَ يُؤْذُونَ رَسُولَ اللَّهِ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٦١﴾

६१) र उनीहरूमध्ये यस्ता पनि छन्, जो नबीलाई दुःख दिन्छन्, र भन्दछन्: (त्यो त) कानको कमजोर हो । भनिदिनुस्: "त्यो कान तिम्रो भलोको निम्ति हो । उसले अल्लाहमाथि ईमान राख्दछ र मुसलमानहरूको कुरामा विश्वास गर्दछ । र तिमीमध्ये जो ईमानवाला छन्, यो उनीहरूको निम्ति रहमत (पुरस्कार) हो, रसूलुल्लाह (स.अ.) लाई जसले यातना दिन्छन्, उनीहरूको निम्ति दुःखद यातना छ ।

يَحْلِفُونَ بِاللَّهِ لَكُمْ لِيُرْضُوكُمْ وَاللَّهُ وَرَسُولُهُ أَحَقُّ أَن يُرْضُوهُ إِن كَانُوا مُؤْمِنِينَ ﴿٦٢﴾

६२) उनीहरूले तिमीलाई खुशी पार्नको निम्ति मात्र तिम्रो अगाडि अल्लाहका शपथ खान्छन् । जबकि यदि यिनी ईमानदार भएको भए अल्लाह र उसको रसूललाई खुशी पार्न धेरै हकदार हुन्थे ।

أَلَمْ يَعْلَمُوٓا۟ أَنَّهُۥ مَن يُحَادِدِ ٱللَّهَ وَرَسُولَهُۥ فَأَنَّ لَهُۥ نَارَ جَهَنَّمَ خَالِدًا فِيهَا ۚ ذَٰلِكَ ٱلْخِزْىُ ٱلْعَظِيمُ ﴿٦٣﴾

६३) के यिनीहरू जान्दैनन् कि जो पनि अल्लाह र उसको रसूलको विरोध गर्नेछ, उसको निम्ति निश्चय नै नर्कको आगो छ जसमा तिनी सँधैं रहनेवाला छन्। यो ठूलो अपमानजनक कुरा हो ।

يَحْذَرُ ٱلْمُنَٰفِقُونَ أَن تُنَزَّلَ عَلَيْهِمْ سُورَةٌ تُنَبِّئُهُم بِمَا فِى قُلُوبِهِمْ ۚ قُلِ ٱسْتَهْزِءُوٓا۟ إِنَّ ٱللَّهَ مُخْرِجٌ مَّا تَحْذَرُونَ ﴿٦٤﴾

६४) मुनाफिकहरू (कपटी)लाई सधैं यस कुराको भय रहन्छ कि मुसलमानहरूमाथि यस्तो सूराः अवतरित नहोस् जसले उनीहरू-का हृदयका कुरा यिनीहरूलाई बताइदेओस् । भनिदिनुस् तिमी खिल्ली उडाई राख, निःसन्देह अल्लाह तआला त्यसलाई प्रकट गर्नेवाला छ, जुन कुराको तिमीलाई भय छ ।

وَلَئِن سَأَلْتَهُمْ لَيَقُولُنَّ إِنَّمَا كُنَّا نَخُوضُ وَنَلْعَبُ ۚ قُلْ أَبِٱللَّهِ وَءَايَٰتِهِۦ وَرَسُولِهِۦ كُنتُمْ تَسْتَهْزِءُونَ ﴿٦٥﴾

६५) यदि तपाईंले उनीहरूसंग सोध्नुहुन्छ भने स्पष्ट भन्नेछन् कि हामी त यस्तै आपसमा हाँसो(खेल) गरिराखेका थियौं । भन्नुस्: "के अल्लाह, उसका आयतहरू र उसका रसूलनै तिम्रो लागि हाँस-खेलका पात्र हुन् ?

لَا تَعْتَذِرُوا۟ قَدْ كَفَرْتُم بَعْدَ إِيمَٰنِكُمْ ۚ إِن نَّعْفُ عَن طَآئِفَةٍ مِّنكُمْ نُعَذِّبْ طَآئِفَةًۢ بِأَنَّهُمْ كَانُوا۟ مُجْرِمِينَ ﴿٦٦﴾

६६) तिमी बहाना नबनाऊ, निश्चय नै तिमीले ईमान ल्याएपछि काफ़िर भएका हौ । यदि हामीले तिमीमध्ये केहीलाई क्षमा गरिहालें पनि केहीलाई उनको कसूरका लागि यातना दिएर नै छाड्ने छौं किनभने उनीहरू अपराधी हुन् ।

اَلْمُنٰفِقُوْنَ وَالْمُنٰفِقٰتُ بَعْضُهُمْ مِّنْۢ بَعْضٍ ۘ يَاْمُرُوْنَ بِالْمُنْكَرِ وَيَنْهَوْنَ عَنِ الْمَعْرُوْفِ وَيَقْبِضُوْنَ اَيْدِيَهُمْ ؕ نَسُوا اللّٰهَ فَنَسِيَهُمْ ؕ اِنَّ الْمُنٰفِقِيْنَ هُمُ الْفٰسِقُوْنَ ﴿٦٧﴾

६७) सबै कप्टी पुरुष र स्त्री आपसमा एक समान छन् । यिनीहरूले नराम्रा कामगर्न लगाउँछन् र राम्रा कुराबाट रोक्छन् र कन्जूसी गर्दछन् । उनीहरूले अल्लाहलाई बिर्सिहालेछन् त अल्लाहले उनीहरूलाई पनि बिर्सिदियो । निश्चय नै मुनाफिक्, अवज्ञाकारी र चरित्रहीन छन् ।

وَعَدَ اللّٰهُ الْمُنٰفِقِيْنَ وَالْمُنٰفِقٰتِ وَالْكُفَّارَ نَارَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ؕ هِيَ حَسْبُهُمْ ۚ وَلَعَنَهُمُ اللّٰهُ ۚ وَلَهُمْ عَذَابٌ مُّقِيْمٌ ﴿٦٨﴾ۙ

६८) अल्लाह तआलाले यी मुनाफिक पुरुष, स्त्री र काफ़िरहरूसित नर्कको आगोको वाचा गरिसकेको छ । जहाँ यिनीहरू सधैं रहनेछन् । त्यही नै यिनीहरूको निम्ति प्रयाप्त छ । उनीहरूमाथि अल्लाहको धिक्कार छ । र यिनीहरूकै निम्ति स्थायी यातना छ ।

كَالَّذِيْنَ مِنْ قَبْلِكُمْ كَانُوْٓا اَشَدَّ مِنْكُمْ قُوَّةً وَّاَكْثَرَ اَمْوَالًا وَّاَوْلَادًا ؕ فَاسْتَمْتَعُوْا بِخَلَاقِهِمْ فَاسْتَمْتَعْتُمْ بِخَلَاقِكُمْ كَمَا اسْتَمْتَعَ الَّذِيْنَ مِنْ قَبْلِكُمْ بِخَلَاقِهِمْ وَخُضْتُمْ كَالَّذِيْ خَاضُوْا ؕ اُولٰٓئِكَ حَبِطَتْ اَعْمَالُهُمْ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ وَاُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٦٩﴾

६९) उनीहरू जस्तै, जो तिमीभन्दा पहिला थिए । उनीहरू शक्तिमा तिमीभन्दा निकै शक्तिशाली र धनसम्पति र सन्तानहरूमा धेरै सम्पन्न थिए । अनि उनीहरूले आफ्ना भागको आनन्द लिन चाहे र तिमी पनि आफ्नो भागको स्वाद लिन चाहेको जुन प्रकारले तिमीभन्दा पहिलाका मानिसहरूले आफ्नो भागबाट लाभान्वित भएका थिए र जुन प्रकारले उनीहरू वादविवादमा परेका थिए, तिमी पनि उस्तै हाँस ख्यालको वादविवादमा परिहाल्यौ । यी तिनै हुन् जसका कर्महरू

दुनियाँ र आख़िरतमा व्यर्थ भए, र तिनै घाटामा पर्नेवाला हुन् ।

७०) के उनीहरूलाई ती मानिसहरूको बृत्तान्त पुगेन, जो उनीभन्दा पहिला गुज्रिसकेका छन्– नूह, आद र समूदको क़ौमहरू, र इब्राहीमको क़ौमका र मदियनवालाको र ती उल्टो बस्तीहरूका बासिन्दाको उनका रसूलहरू उनीहरूको पासमा खुल्ला निशानीहरू लिएर आएका थिए, अनि अल्लाह यस्तो थिएन कि उसले उनीहरूमाथि अत्याचार गरोस् परन्तु उनीहरू स्वयंले आफूमाथि अत्याचार गरिराखेका थिए ।

أَلَمْ يَأْتِهِمْ نَبَأُ الَّذِينَ مِن قَبْلِهِمْ قَوْمِ نُوحٍ وَعَادٍ وَثَمُودَ وَقَوْمِ إِبْرَاهِيمَ وَأَصْحَابِ مَدْيَنَ وَالْمُؤْتَفِكَاتِ ۚ أَتَتْهُمْ رُسُلُهُم بِالْبَيِّنَاتِ ۖ فَمَا كَانَ اللَّهُ لِيَظْلِمَهُمْ وَلَٰكِن كَانُوا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٧٠﴾

७१) मोमिन पुरुष, स्त्रीहरू परस्पर एक–अर्काका सहायक र मित्र हुन् उनीहरूले राम्रा कुरा गर्न भन्दछन् र नराम्रा कुराबाट रोक्दछन् । नियमित नमाज़ पढदछन्, जकात दिन्छन्, अल्लाह र उसका रसूलको आज्ञा पालन गर्दछन् । यी तिनै मानिस हुन्, जसमाथि शीघ्र नै अल्लाहले दया गर्नेछ । निःसन्देह अल्लाह सर्वशक्तिशाली, तत्वदर्शी छ ।

وَالْمُؤْمِنُونَ وَالْمُؤْمِنَاتُ بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۚ يَأْمُرُونَ بِالْمَعْرُوفِ وَيَنْهَوْنَ عَنِ الْمُنكَرِ وَيُقِيمُونَ الصَّلَاةَ وَيُؤْتُونَ الزَّكَاةَ وَيُطِيعُونَ اللَّهَ وَرَسُولَهُ ۚ أُولَٰئِكَ سَيَرْحَمُهُمُ اللَّهُ ۗ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٧١﴾

७२) अल्लाहले यी मोमिन् पुरुषहरू र मोमिन् स्त्रीहरूसित स्वर्गको वचन दिएको छ जसमुनि नहरहरू बगिराखेका हुनेछन्, जसमा उनीहरू सधैं बास गर्नेछन् र पवित्र निवास

وَعَدَ اللَّهُ الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا وَمَسَاكِنَ طَيِّبَةً فِي جَنَّاتِ عَدْنٍ ۚ وَرِضْوَانٌ مِّنَ اللَّهِ أَكْبَرُ ۚ ذَٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿٧٢﴾

गृहहरूको पनि (वादा) छ, जुन समाप्त नहुनेवाला जन्नतमा छन् र अल्लाहको प्रसन्नता सबभन्दा ठूलो कुरा हो, यही नै सबभन्दा ठूलो सफलता हो ।

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ جَٰهِدِ ٱلْكُفَّارَ وَٱلْمُنَٰفِقِينَ وَٱغْلُظْ
عَلَيْهِمْ ۚ وَمَأْوَىٰهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ﴿٧٣﴾

७३) हे नबी ! इन्कार गर्ने र मुनाफिक़हरूसित धर्म युद्ध जारी राख । र उनीहरूसित कडाई-कासाथ व्यवहार गर । अन्ततः उनीहरूको ठेगाना नर्क हो र त्यो साह्रै नराम्रो ठाउँ हो ।

يَحْلِفُونَ بِٱللَّهِ مَا قَالُوا۟ وَلَقَدْ قَالُوا۟ كَلِمَةَ ٱلْكُفْرِ
وَكَفَرُوا۟ بَعْدَ إِسْلَٰمِهِمْ وَهَمُّوا۟ بِمَا لَمْ يَنَالُوا۟ ۚ
وَمَا نَقَمُوٓا۟ إِلَّآ أَنْ أَغْنَىٰهُمُ ٱللَّهُ وَرَسُولُهُۥ مِن
فَضْلِهِۦ ۚ فَإِن يَتُوبُوا۟ يَكُ خَيْرًا لَّهُمْ ۖ وَإِن
يَتَوَلَّوْا۟ يُعَذِّبْهُمُ ٱللَّهُ عَذَابًا أَلِيمًا فِى ٱلدُّنْيَا
وَٱلْءَاخِرَةِ ۚ وَمَا لَهُمْ فِى ٱلْأَرْضِ مِن وَلِىٍّ وَلَا
نَصِيرٍ ﴿٧٤﴾

७४) उनीहरू अल्लाहको शपथ खाएर भन्दछन् कि उनीहरूले भनेनन्, जबकि उनीहरूले अवश्य नै कुफ्रको कुरा गरेका हुन् । र आफूले इस्लाम स्वीकार गरेपश्चात इन्कार गरे, र उनीहरूले त्यस कामको इच्छा पनि गरे, जुन पूरा हुन सकेन । र उनीहरूको प्रतिशोधको कारण त यो हो कि अल्लाह आफ्नो कृपाले र उसका रसूलले उनीहरूलाई समृद्ध गरिहाले । यदि उनीहरू अहिले पनि प्रायश्चित गरे भने उनीहरूकै लागि राम्रो हुनेछ र यदि उनीहरू विमुख भए भने अल्लाहले उनीहरूलाई दुनियाँ र आख़िरतमा दुःखद यातना दिनेछ र धर्तीमा उनीहरूको न कोही मित्र हुनेछ र न त सहायक ।

وَمِنْهُم مَّنْ عَٰهَدَ ٱللَّهَ لَئِنْ ءَاتَىٰنَا مِن فَضْلِهِۦ
لَنَصَّدَّقَنَّ وَلَنَكُونَنَّ مِنَ ٱلصَّٰلِحِينَ ﴿٧٥﴾

७५) उनीहरूमध्ये केही यस्ता व्यक्तिहरू पनि छन् जसले अल्लाहसंग वचन

दिएका थिए कि यदि उसले हामीलाई आफ्नो कृपाले दियो भने हामी अवश्य नै दान गर्नेछौं र पक्कापक्की सदाचारीमध्येका हुनेछौं ।

فَلَمَّآ اٰتٰىهُمْ مِّنْ فَضْلِهٖ بَخِلُوْا بِهٖ وَتَوَلَّوْا وَّهُمْ مُّعْرِضُوْنَ ﴿٧٦﴾

७६) तर जब अल्लाहले उनीहरूलाई आफ्नो अनुग्रहले दियो त उनीहरूले त्यसमा कन्जूस्याई गर्नथाले र आलटाल गरी विमुख भइहाले ।

فَاَعْقَبَهُمْ نِفَاقًا فِيْ قُلُوْبِهِمْ اِلٰى يَوْمِ يَلْقَوْنَهٗ بِمَآ اَخْلَفُوا اللّٰهَ مَا وَعَدُوْهُ وَبِمَا كَانُوْا يَكْذِبُوْنَ ﴿٧٧﴾

७७) अनि त्यसको सजायमा अल्लाहले उनीहरूका हृदयमा त्यस दिन सम्मका लागि कप्टाचार हालिदियो, जबकि उनीहरू उसित भेट्नेछन् किनभने उनीहरूले अल्लाहसित जुन प्रतिज्ञा गरेका थिए, त्यसलाई भङ्ग गरिदिए र यसकारण पनि कि उनीहरू झूठ बोल्दै गरे ।

اَلَمْ يَعْلَمُوْٓا اَنَّ اللّٰهَ يَعْلَمُ سِرَّهُمْ وَنَجْوٰىهُمْ وَاَنَّ اللّٰهَ عَلَّامُ الْغُيُوْبِ ﴿٧٨﴾

७८) के उनीहरूलाई थाहा छैन कि अल्लाह उनीहरूको मनको रहस्य र उनीहरूको कानेखुसीलाई राम्ररी जान्दछ र यो कि अल्लाह अदृश्यका सम्पूर्ण कुराहरू राम्ररी जान्दछ ।

اَلَّذِيْنَ يَلْمِزُوْنَ الْمُطَّوِّعِيْنَ مِنَ الْمُؤْمِنِيْنَ فِي الصَّدَقٰتِ وَالَّذِيْنَ لَا يَجِدُوْنَ اِلَّا جُهْدَهُمْ فَيَسْخَرُوْنَ مِنْهُمْ سَخِرَ اللّٰهُ مِنْهُمْ وَلَهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٧٩﴾

७९) जुन मानिसहरूले उदारतापूर्वक दान गर्ने मोमिनहरूमाथि उनीहरूको दानको विषयमा कटाक्ष गर्दछन् र उनीहरूको उपहास गर्दछन् जसको पासमा उनीहरूको परिश्रम बाहेक अरु केही छैन, त तिनीहरूको उपहास अल्लाहले गर्दछ र उनीहरूको निम्ति दुःखद यातना छ ।

८०) तिमी उनीहरूको निम्ति क्षमाको प्रार्थना गर वा नगर । यदि तिमी उनीहरूको निम्ति सत्तरी पटक पनि क्षमाको प्रार्थना गर्छौ भने, अल्लाहले उनीहरूलाई क्षमा गर्ने छैन, किनभने उनीहरू अल्लाह र उसको रसूलसँग कुफ्र गरे र अल्लाह अवज्ञारीहरूलाई सोझो मार्ग देखाउँदैन ।

اِسْتَغْفِرْ لَهُمْ اَوْ لَا تَسْتَغْفِرْ لَهُمْ ۗ اِنْ تَسْتَغْفِرْ لَهُمْ سَبْعِيْنَ مَرَّةً فَلَنْ يَّغْفِرَ اللّٰهُ لَهُمْ ۗ ذٰلِكَ بِاَنَّهُمْ كَفَرُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ۗ وَاللّٰهُ لَا يَهْدِي الْقَوْمَ الْفٰسِقِيْنَ ﴿٨٠﴾

८१) पछि परेकाहरू रसूलुल्लाह(स.अ.) गैसकेपश्चात आफू बसिराख्नुमा खुशी छन् । उनीहरूले अल्लाहको मार्गमा आफ्ना माल र आफ्नो ज्यानहरूसित जिहाद गर्न रुचाएनन् र उनीहरूले भने कि यस गर्मीमा ननिस्क । भनिदिनुस् कि नर्कको आगो साह्रै नै गरम छ । यिनीहरूले यो कुरा बुझ्केको भए कति राम्रो हुने थियो ।

فَرِحَ الْمُخَلَّفُوْنَ بِمَقْعَدِهِمْ خِلٰفَ رَسُوْلِ اللّٰهِ وَكَرِهُوْٓا اَنْ يُّجَاهِدُوْا بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ فِيْ سَبِيْلِ اللّٰهِ وَقَالُوْا لَا تَنْفِرُوْا فِي الْحَرِّ ۗ قُلْ نَارُ جَهَنَّمَ اَشَدُّ حَرًّا ۗ لَوْ كَانُوْا يَفْقَهُوْنَ ﴿٨١﴾

८२) तसर्थ यिनीहरूले आफ्ना क्रियाकलापहरूको बदलामा जो यिनीहरूले गर्दथे कम हाँसुन् र धेरै रोउन् ।

فَلْيَضْحَكُوْا قَلِيْلًا وَّلْيَبْكُوْا كَثِيْرًا ۚ جَزَآءًۢ بِمَا كَانُوْا يَكْسِبُوْنَ ﴿٨٢﴾

८३) अब यदि अल्लाहले तपाईलाई उनीहरूको कुनै समूहतिर फर्काएर लगाएपछि अनि भविष्यमा तिनीहरूले तपाईंसित युद्ध मैदानमा निस्कन अनुमति चाहन्छन् भने त भनिदिनुस् : "तिमीहरू मेरो साथमा

فَاِنْ رَّجَعَكَ اللّٰهُ اِلٰى طَآئِفَةٍ مِّنْهُمْ فَاسْتَاْذَنُوْكَ لِلْخُرُوْجِ فَقُلْ لَّنْ تَخْرُجُوْا مَعِيَ اَبَدًا وَّلَنْ تُقَاتِلُوْا مَعِيَ عَدُوًّا ۗ اِنَّكُمْ رَضِيْتُمْ بِالْقُعُوْدِ اَوَّلَ مَرَّةٍ فَاقْعُدُوْا مَعَ الْخٰلِفِيْنَ ﴿٨٣﴾

कहिल्यै पनि निस्कन सक्दैनौ र न त मेरो साथमा कुनै शत्रुसँग लड्न सक्छौ । तिमीले पहिलोपटक नै बसिराख्न रुचायौ, तसर्थ अब पछि पर्नेहरूकै साथमा बसिराख ।

وَلَا تُصَلِّ عَلَىٰٓ أَحَدٍ مِّنْهُم مَّاتَ أَبَدًا وَلَا تَقُمْ عَلَىٰ قَبْرِهِۦٓ ۖ إِنَّهُمْ كَفَرُوا۟ بِٱللَّهِ وَرَسُولِهِۦ وَمَاتُوا۟ وَهُمْ فَٰسِقُونَ ﴿٨٤﴾

८४) यिनीहरूमध्ये कोही मर्छ भने तपाईंले उसको जनाजाको नमाज़ कहिल्यै नपढ्नु र न उसको चिहान छेउ उभिनु । यिनीहरूले अल्लाह र उसका रसूलका अवज्ञा गरे, र मर्ने बेलासम्म पनि उल्लङ्घनकारी र तिरस्कृत नै रहे ।

وَلَا تُعْجِبْكَ أَمْوَٰلُهُمْ وَأَوْلَٰدُهُمْ ۚ إِنَّمَا يُرِيدُ ٱللَّهُ أَن يُعَذِّبَهُم بِهَا فِى ٱلدُّنْيَا وَتَزْهَقَ أَنفُسُهُمْ وَهُمْ كَٰفِرُونَ ﴿٨٥﴾

८५) तपाईंलाई तिनीहरूका धन-सम्पत्ति र सन्तान आकृष्ट नगरुन् । अल्लाह त यही नै चाहन्छ कि ती कुराहरूद्वारा उनीहरूलाई संसारमा सजाय देओस् र यिनीहरू आफ्ना प्राण ननिस्कुनजेलसम्म काफ़िर नै रहुन् ।

وَإِذَآ أُنزِلَتْ سُورَةٌ أَنْ ءَامِنُوا۟ بِٱللَّهِ وَجَٰهِدُوا۟ مَعَ رَسُولِهِ ٱسْتَـْٔذَنَكَ أُو۟لُوا۟ ٱلطَّوْلِ مِنْهُمْ وَقَالُوا۟ ذَرْنَا نَكُن مَّعَ ٱلْقَٰعِدِينَ ﴿٨٦﴾

८६) जब कुनै सूरः उतारिन्छ कि, "अल्लाहमाथि आस्था राख र उसका रसूलको साथ मिलेर जिहाद गर"। त यिनीमध्ये सम्पन्नहरूको एउटा समूह तपाईंको पासमा आएर विदा माँग्दछन् र भन्छन् कि "हामीलाई त बसिराख्नेहरूसित नै छोड्दिनुस्"।

رَضُوا۟ بِأَن يَكُونُوا۟ مَعَ ٱلْخَوَالِفِ وَطُبِعَ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَفْقَهُونَ ﴿٨٧﴾

८७) उनीहरूले त पर्दा भित्रका स्त्रीहरूकै साथ दिने कुरामा प्रसन्न भइहाले, र उनीहरूको हृदयमा छाप

लगाइहालियो । अब उनीहरू केही बुझ्दैनन् ।

८८) तर स्वयं रसूल (स.अ.) र उनका साथमा ईमानवालाहरूले आफ्ना माल र ज्यानसित जिहाद गर्दछन् । यी व्यक्तिहरू नै भलाईवाला हुन् र यी मानिसहरू नै सफलता प्राप्त गर्नेवाला हुन् ।

لٰكِنِ الرَّسُوْلُ وَالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ جٰهَدُوْا
بِاَمْوَالِهِمْ وَاَنْفُسِهِمْ ۗ وَاُولٰٓئِكَ لَهُمُ الْخَيْرٰتُ ۡ
وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ﴿٨٨﴾

८९) यिनीहरूकै निम्ति अल्लाहले ती स्वर्गहरू तयार गरेको छ, जसको मुनि नहरहरू बगिराखेका छन् जसमा यिनीहरू सधैं रहने छन् । यही ठूलो सफलता हो ।

اَعَدَّ اللّٰهُ لَهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ
خٰلِدِيْنَ فِيْهَا ۗ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿٨٩﴾

९०) बहाना बनाउने केही अज्ञान पनि आए ताकि उनीहरूलाई विदा दिइयोस् र जो अल्लाह र उसका रसूलसँग झूठा कुरा गरे, उनीहरू पनि बसिराखे । उनीहरूमध्ये जसले इन्कार गरे तिनीहरूलाई शिघ्र नै एउटा दुःखद यातना पुगेर नै छाड्नेछ ।

وَجَآءَ الْمُعَذِّرُوْنَ مِنَ الْاَعْرَابِ لِيُؤْذَنَ لَهُمْ
وَقَعَدَ الَّذِيْنَ كَذَبُوا اللّٰهَ وَرَسُوْلَهٗ ۗ سَيُصِيْبُ
الَّذِيْنَ كَفَرُوْا مِنْهُمْ عَذَابٌ اَلِيْمٌ ﴿٩٠﴾

९१) कम्जोर र रोगीहरूमाथि र उनीहरूमाथि जसको पासमा खर्च गर्नको निम्ति केही पनि छैन, कुनै दोष छैन, यस शर्तमा कि उनीहरू अल्लाह र उसका रसूलप्रति निष्ठावान् छन् । यस्ता असल काम गर्नेहरूमाथि दोषको कुनै गुन्जाइस छैन । अल्लाह त बडो क्षमाशील, अत्यन्त दयावान छ ।

لَيْسَ عَلَى الضُّعَفَآءِ وَلَا عَلَى الْمَرْضٰى وَلَا عَلَى
الَّذِيْنَ لَا يَجِدُوْنَ مَا يُنْفِقُوْنَ حَرَجٌ اِذَا نَصَحُوْا
لِلّٰهِ وَرَسُوْلِهٖ ۗ مَا عَلَى الْمُحْسِنِيْنَ مِنْ سَبِيْلٍ ۗ
وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٩١﴾

९२) र न त उनीहरूमाथि कुनै दोष लाग्छ जो तपाईंको पासमा आउँछन् कि तपाईंले उनीहरूको निम्ति सवारीको प्रबन्ध गरिदिनुस् अनि तपाईंले जवाफ दिनुहुन्छ कि म तिमीहरूको सवारीको निम्ति केही पनि पाउन्न, त उनीहरू दुःखद अवस्थामा आँखाबाट आँसु बगाउँदै फर्कन्छन् कि उनीहरूसित खर्च गर्नको निम्ति केही पनि उपलब्ध छैन ।

وَلَا عَلَى الَّذِينَ إِذَا مَا أَتَوْكَ لِتَحْمِلَهُمْ قُلْتَ لَا أَجِدُ مَا أَحْمِلُكُمْ عَلَيْهِ تَوَلَّوا وَّأَعْيُنُهُمْ تَفِيضُ مِنَ الدَّمْعِ حَزَنًا أَلَّا يَجِدُوا مَا يُنفِقُونَ ﴿٩٢﴾

९३) निःसन्देह दोष त मात्रै उनीहरूमाथि छ जो सम्पन्न हुँदा-हुँदै पनि तपाईंसित विदा माँगदछन् । यिनीहरू त पर्दाभित्र घरमा बसिराख्ने स्त्रीहरूका साथ दिनुमा खुशी छन् र उनीहरूको हृदयमा अल्लाहले छाप लगाईसकेको छ, जसबाट तिनीहरू अज्ञान भइसकेका छन् ।

إِنَّمَا السَّبِيلُ عَلَى الَّذِينَ يَسْتَأْذِنُونَكَ وَهُمْ أَغْنِيَاءُ ۚ رَضُوا بِأَن يَكُونُوا مَعَ الْخَوَالِفِ وَطَبَعَ اللَّهُ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَعْلَمُونَ ﴿٩٣﴾

९४) जब तिमी फर्केर उनीहरूको पासमा पुग्छौ त उनीहरूले तिम्रो समक्ष बहाना बनाउने छन् । तपाईं भनिदिनुस्: यो बहाना नबनाऊः हामीले तिमीलाई कहिल्यै साँचो ठान्ने छैनौं । अल्लाहले हामीलाई तिम्रा बृत्तान्त भनिसकेको छ, । र पछि पनि अल्लाह र उसका रसूलले तिम्रा क्रियाकलाप देख्नेछन्, अनि यस्ताको पासमा फर्काइनेछौ जो अदृश्य र प्रकट सबैको ज्ञाता छ । अनि जे-जति क्रियाकलाप तिमीले

يَعْتَذِرُونَ إِلَيْكُمْ إِذَا رَجَعْتُمْ إِلَيْهِمْ ۚ قُل لَّا تَعْتَذِرُوا لَن نُّؤْمِنَ لَكُمْ قَدْ نَبَّأَنَا اللَّهُ مِنْ أَخْبَارِكُمْ ۚ وَسَيَرَى اللَّهُ عَمَلَكُمْ وَرَسُولُهُ ثُمَّ تُرَدُّونَ إِلَىٰ عَالِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٩٤﴾

गर्दैआएका छौ, उसले तिमीलाई भनिदिनेछ ।

९५) यिनीहरू अब तपाईं अगाडि किरिया खानेछन् जब तपाईं उनी निर फर्केर जानुहुन्छ ताकि तपाईंले उनीहरूलाई उनको अवस्थामा छाडिदिनुस् । तसर्थ तपाईंले उनीहरूलाई उनको हालतमा छाडिदिनुस् किनभनेकि उनीहरू पूर्ण फोहरी छन्, उनको बासस्थान नर्क छ त्यस क्रियाकलापको साटो जुन तिनीहरूले गर्दथे ।

سَيَحْلِفُونَ بِاللَّهِ لَكُمْ إِذَا انْقَلَبْتُمْ إِلَيْهِمْ لِتُعْرِضُوا عَنْهُمْ ۖ فَأَعْرِضُوا عَنْهُمْ ۖ إِنَّهُمْ رِجْسٌ ۖ وَمَأْوَاهُمْ جَهَنَّمُ جَزَاءً بِمَا كَانُوا يَكْسِبُونَ ﴿٩٥﴾

९६) यिनीहरू यस कारण शपथ खानेछन्, कि तपाईं उनिहरूसंग खुशी भई हाल्नुस् । यदि तपाईं उनीसँग खुशी भए पनि अल्लाह कदापि यस्ता "फासिक्" अवज्ञाकारी मान्छेहरूसँग खुशी हुँदैन ।

يَحْلِفُونَ لَكُمْ لِتَرْضَوْا عَنْهُمْ ۖ فَإِنْ تَرْضَوْا عَنْهُمْ فَإِنَّ اللَّهَ لَا يَرْضَىٰ عَنِ الْقَوْمِ الْفَاسِقِينَ ﴿٩٦﴾

९७) अज्ञानीहरू (अरबका बद्दुहरू) साह्रै ठूला काफिर र पाखण्डी छन् र तिनीहरूका लागि यही नै मुनासिब छ कि जुन आदेशहरू अल्लाहले आफ्ना रसूललाई पठाउनु भएको छ, त्यसबाट तिनीहरू अनभिज्ञ रहुन् र अल्लाह सर्वज्ञता र बुद्धिमता सम्पन्न छ ।

الْأَعْرَابُ أَشَدُّ كُفْرًا وَنِفَاقًا وَأَجْدَرُ أَلَّا يَعْلَمُوا حُدُودَ مَا أَنْزَلَ اللَّهُ عَلَىٰ رَسُولِهِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٩٧﴾

९८) र केही अज्ञानी यस्ता छन् कि जे जति खर्च गर्दछन् त्यसलाई जरिमाना ठान्दछन् र तिम्रो निम्ति विपत्तिको प्रतिक्षामा रहन्छन् । तिनीहरूमाथि

وَمِنَ الْأَعْرَابِ مَنْ يَتَّخِذُ مَا يُنْفِقُ مَغْرَمًا وَيَتَرَبَّصُ بِكُمُ الدَّوَائِرَ ۚ عَلَيْهِمْ دَائِرَةُ السَّوْءِ ۗ وَاللَّهُ سَمِيعٌ عَلِيمٌ ﴿٩٨﴾

नै ठूलो आपत्ति आओस् र अल्लाह सबै कुरा सुन्ने (र) जान्ने वाला छ ।

९९) र केही अज्ञानीहरू यस्ता पनि छन् जो कि अल्लाह र आखिरतको दिनमाथि आस्था राख्दछन् र जे जति खर्च गर्दछन्, त्यसलाई अल्लाहको सामीप्य र पैगम्बरको आशिर्वाद प्राप्त गर्ने माध्यम ठान्दछन् । हेर, अवश्य नै त्यसले, तिनीहरूलाई त्यसको समीपमा लग्ने छ । अल्लाहले तिनीहरूलाई शीघ्र नै आफ्नो दयाको पात्र बनाउने छ । अल्लाह क्षमादाता र बडो कृपालु छ ।

وَمِنَ الْاَعْرَابِ مَنْ يُّؤْمِنُ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ وَيَتَّخِذُ مَا يُنْفِقُ قُرُبٰتٍ عِنْدَ اللّٰهِ وَصَلَوٰتِ الرَّسُوْلِ ؕ اَلَاۤ اِنَّهَا قُرْبَةٌ لَّهُمْ ؕ سَيُدْخِلُهُمُ اللّٰهُ فِىْ رَحْمَتِهٖ ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٩٩﴾

१००) र जो मुहाजिरहरू तथा अन्सारहरू (आप्रवासी तथा स्थानीय सहयोगी मानिस) सत्मार्गमा अग्रसरता देखाएका छन् र जसले साथमा रही तिनीहरूको अनुशरण गरे, अल्लाह तिनीहरूसित खुशी छ र तिनीहरू पनि अल्लाहसित प्रसन्न छन् तिनीहरूको निम्ति यस्ता बगैंचाहरू तयार छन् जसको तल नहरहरू बगिरहने छन् (तिनीहरू) सधैं त्यसमा बास गर्ने छन् । यही ठूलो सफलता हो ।

وَالسّٰبِقُوْنَ الْاَوَّلُوْنَ مِنَ الْمُهٰجِرِيْنَ وَالْاَنْصَارِ وَالَّذِيْنَ اتَّبَعُوْهُمْ بِاِحْسَانٍ ۙ رَّضِىَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ وَاَعَدَّ لَهُمْ جَنّٰتٍ تَجْرِىْ تَحْتَهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَاۤ اَبَدًا ؕ ذٰلِكَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٠٠﴾

१०१) र केही तिम्रा छर छिमेकका र केही मदीनाका बासिन्दाहरू पनि पाखण्डमा परेका छन् । तपाईंले तिनीहरूलाई जान्नुहुँदैन, हामीले

وَمِمَّنْ حَوْلَكُمْ مِّنَ الْاَعْرَابِ مُنٰفِقُوْنَ ۛؕ وَمِنْ اَهْلِ الْمَدِيْنَةِ ۛؔ مَرَدُوْا عَلَى النِّفَاقِ ۟ لَا تَعْلَمُهُمْ ؕ نَحْنُ نَعْلَمُهُمْ ؕ سَنُعَذِّبُهُمْ مَّرَّتَيْنِ ثُمَّ يُرَدُّوْنَ اِلٰى عَذَابٍ عَظِيْمٍ ﴿١٠١﴾

तिनीहरूलाई जान्दछौं, हामीले तिनीहरूलाई दोब्बर सजाय दिने छौं, अनि तिनीहरू झन् ठूलो सजायतिर लगिने छन् ।

وَاٰخَرُوْنَ اعْتَرَفُوْا بِذُنُوْبِهِمْ خَلَطُوْا عَمَلًا صَالِحًا وَّاٰخَرَ سَيِّئًا ۭ عَسَى اللّٰهُ اَنْ يَّتُوْبَ عَلَيْهِمْ ۭ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١٠٢﴾

१०२) र केही अरु मानिसहरू छन् जसले कि आफ्ना त्रुटिहरू स्पष्ट रूपले स्वीकार गर्दछन् । जसले असल र खराब दुवै किसिमका काम गरेका थिए । आशा छ कि अल्लाहले तिनीहरूको पश्चाताप स्वीकार गर्नेछ । निःसन्देह अल्लाह ठूलो क्षमादाता, दयावान् छ ।

خُذْ مِنْ اَمْوَالِهِمْ صَدَقَةً تُطَهِّرُهُمْ وَتُزَكِّيْهِمْ بِهَا وَصَلِّ عَلَيْهِمْ ۭ اِنَّ صَلٰوتَكَ سَكَنٌ لَّهُمْ ۭ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿١٠٣﴾

१०३) तिनीहरूको सम्पत्तिबाट तपाईंले सदका (दान) लिनुस् जसबाट तिनीहरूलाई तपाईंले शुद्ध र पवित्र गरिदिनुस् र तिनीहरूका लागि प्रार्थना गर्नुस्, निःसन्देह तपाईंको प्रार्थना तिनीहरूको सन्तुष्टिको श्रोत हो र अल्लाह धेरै सुन्नेवाला र जान्नेवाला छ ।

اَلَمْ يَعْلَمُوْٓا اَنَّ اللّٰهَ هُوَ يَقْبَلُ التَّوْبَةَ عَنْ عِبَادِهٖ وَيَاْخُذُ الصَّدَقٰتِ وَاَنَّ اللّٰهَ هُوَ التَّوَّابُ الرَّحِيْمُ ﴿١٠٤﴾

१०४) के यिनीहरूलाई यो थाहा छैन कि अल्लाहले नै आफ्ना भक्तहरूबाट प्रायश्चित स्वीकार गर्दछ र उसैले दानहरू स्वीकार गर्दछ, र निःसन्देह अल्लाह नै प्रायश्चित स्वीकार गर्नेवाला र परम दयालु छ ।

وَقُلِ اعْمَلُوْا فَسَيَرَى اللّٰهُ عَمَلَكُمْ وَرَسُوْلُهٗ وَالْمُؤْمِنُوْنَ ۭ وَسَتُرَدُّوْنَ اِلٰى عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿١٠٥﴾

१०५) भनिदिनुस् कि तिमी सत्कर्म गर्दै जाऊ, अल्लाह र उसका रसूल र मोमिनहरू सबैले तिम्रा क्रियाकलाप

हेर्ने छन् । र तिमीले दृश्य-अदृश्यको ज्ञाता तर्फ अवश्य फर्काइनेछौ । अनि उसले जे जति गर्दै आएका छौ, त्यो सबै तिमीलाई बताउने छ ।

وَءَاخَرُونَ مُرْجَوْنَ لِأَمْرِ ٱللَّهِ إِمَّا يُعَذِّبُهُمْ وَإِمَّا
يَتُوبُ عَلَيْهِمْ ۗ وَٱللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١٠٦﴾

१०६) र केही यस्ता छन् जसको मुद्दा अल्लाहको आदेश आउञ्जेलसम्म मुल्तवी छ, (उसले) चाहे तिनीहरूलाई सजाय देओस्, वा उनको प्रयाश्चित स्वीकार गरोस् र अल्लाह सर्वज्ञाता र तत्वदर्शी छ ।

وَٱلَّذِينَ ٱتَّخَذُوا۟ مَسْجِدًا ضِرَارًا وَكُفْرًا
وَتَفْرِيقًۢا بَيْنَ ٱلْمُؤْمِنِينَ وَإِرْصَادًا لِّمَنْ
حَارَبَ ٱللَّهَ وَرَسُولَهُۥ مِن قَبْلُ ۚ وَلَيَحْلِفُنَّ إِنْ
أَرَدْنَآ إِلَّا ٱلْحُسْنَىٰ ۖ وَٱللَّهُ يَشْهَدُ إِنَّهُمْ
لَكَٰذِبُونَ ﴿١٠٧﴾

१०७) र तिनीहरूमध्ये केही यस्ता पनि छन् जसले कि यो उद्देश्यले मस्जिदको निर्माण गरे ताकि हानि पुऱ्याऊन् र कुफ्रको कुरा गरुन्, र मोमिनहरूमा कलह सृजना गरुन् र तिनीहरूको लागि साधन जुटाऊन् जसले अघि अल्लाह र उसका रसूलको विरोध गरिसके छन् र किरिया खान्छन् कि हाम्रो उद्देश्य त मात्र भलो गर्नु थियो, तर अल्लाह साक्षी छ कि तिनीहरू झूठा छन् ।

لَا تَقُمْ فِيهِ أَبَدًا ۚ لَّمَسْجِدٌ أُسِّسَ عَلَى ٱلتَّقْوَىٰ مِنْ
أَوَّلِ يَوْمٍ أَحَقُّ أَن تَقُومَ فِيهِ ۚ فِيهِ رِجَالٌ
يُحِبُّونَ أَن يَتَطَهَّرُوا۟ ۚ وَٱللَّهُ يُحِبُّ ٱلْمُطَّهِّرِينَ ﴿١٠٨﴾

१०८) तपाईं त्यस (मस्जिद)मा कहिले पनि न उभिनु । त्यस बाहेक जुन मस्जिदको जग नै प्रारम्भदेखि अल्लाहको भक्तिमा आधारित छ, त्यो यस योग्य छ कि तपाईं त्यसमा गएर उभिनुस् । यसमा यस्ता मानिसहरू छन् जसले कि पवित्र रहन रुचाउँछन् ! र अल्लाहले पनि पवित्र रहनेहरूलाई प्रेम गर्दछ ।

१०९) के त्यो मानिस जसले आफ्नो भवनको जग अल्लाहको भय र उसको प्रसन्नतामा राखेको छ, ऊ राम्रो हो वा त्यो राम्रो छ, जसले आफ्नो भवनको जग भत्कन लागेको भीरको छेउमा हाल्यो, जुन उसलाई लिएर नर्कको आगोमा ढलिहाल्छ र अल्लाहले यस्ता अपराधीहरूलाई मार्ग दर्शन गर्दैन ।

أَفَمَنْ أَسَّسَ بُنْيَانَهُ عَلَىٰ تَقْوَىٰ مِنَ اللَّهِ وَرِضْوَانٍ خَيْرٌ أَم مَّنْ أَسَّسَ بُنْيَانَهُ عَلَىٰ شَفَا جُرُفٍ هَارٍ فَانْهَارَ بِهِ فِي نَارِ جَهَنَّمَ ۗ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿١٠٩﴾

११०) उनीहरूको यो भवन जुन तिनीहरूले निर्माण गरेका छन्, सधैं तिनीहरूको हृदयमा (काँडा बनेर) शंका र छटपटि उब्जाइ राख्ने छ, जबसम्म तिनीहरूका मुटु छिया-छिया हुँदैनन् र अल्लाह सर्वज्ञ, तत्वदर्शी छ ।

لَا يَزَالُ بُنْيَانُهُمُ الَّذِي بَنَوْا رِيبَةً فِي قُلُوبِهِمْ إِلَّا أَن تَقَطَّعَ قُلُوبُهُمْ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١١٠﴾

१११) निःसन्देह अल्लाहले मोमिनहरूबाट तिनीहरूको प्राण र माल तिनीहरूका लागि स्वर्गको सट्टामा किनिसकेको छ । यिनीहरू अल्लाहको मार्गमा युद्ध गर्दछन्, जसमा मार्दछन् र मारिन्छन् पनि । यो तौरात, इंजील र कुरआनमा भएको सत्य वचन हो, र अल्लाहभन्दा बढी आफ्नो वचन पूरा गर्नेवाला को छ ? तसर्थ जुन सौदा तिमीले उससँग गरेका छौ त्यसबाट प्रसन्न रह । र यही नै ठूलो सफलता हो ।

إِنَّ اللَّهَ اشْتَرَىٰ مِنَ الْمُؤْمِنِينَ أَنفُسَهُمْ وَأَمْوَالَهُم بِأَنَّ لَهُمُ الْجَنَّةَ ۚ يُقَاتِلُونَ فِي سَبِيلِ اللَّهِ فَيَقْتُلُونَ وَيُقْتَلُونَ ۖ وَعْدًا عَلَيْهِ حَقًّا فِي التَّوْرَاةِ وَالْإِنجِيلِ وَالْقُرْآنِ ۚ وَمَنْ أَوْفَىٰ بِعَهْدِهِ مِنَ اللَّهِ ۚ فَاسْتَبْشِرُوا بِبَيْعِكُمُ الَّذِي بَايَعْتُم بِهِ ۚ وَذَٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿١١١﴾

११२) प्रायश्चित गर्नेहरू, उपासना गर्नेहरू, (अल्लाहको) प्रशंसा गर्नेहरू, उपवास बस्नेहरू, (अथवा सत्मार्गमा यात्रा गर्नेहरू) रुकूअ् गर्नेहरू, ढोगनेहरू

التَّائِبُونَ الْعَابِدُونَ الْحَامِدُونَ السَّائِحُونَ الرَّاكِعُونَ السَّاجِدُونَ الْآمِرُونَ بِالْمَعْرُوفِ وَالنَّاهُونَ عَنِ الْمُنكَرِ وَالْحَافِظُونَ لِحُدُودِ اللَّهِ ۗ وَبَشِّرِ الْمُؤْمِنِينَ ﴿١١٢﴾

सतकर्मको उपदेश दिनेहरू र दुष्कर्मबाट रोक्नेहरू, अल्लाहका सीमाहरूको (अल्लाहले निर्धारित गरेको सीमा) रक्षा गर्नेहरू (मोमिन हुन्) र हे मोहम्मद (स.अ.) मोमिनहरूलाई स्वर्गको शुभ सन्देश सुनाई दिनुस् ।

مَا كَانَ لِلنَّبِيِّ وَالَّذِينَ آمَنُوا أَنْ يَسْتَغْفِرُوا لِلْمُشْرِكِينَ وَلَوْ كَانُوا أُولِي قُرْبَىٰ مِنْ بَعْدِ مَا تَبَيَّنَ لَهُمْ أَنَّهُمْ أَصْحَابُ الْجَحِيمِ ﴿١١٣﴾

११३) पैगम्बर र अन्य मुसलमानलाई उचित छैन कि मुशिरकहरूका लागि क्षमा याचना गरुन्, जबकि यो प्रकट भइसकेको छ कि तिनीहरू नारकिय हुन् चाहे तिनीहरू नजिकका नातेदार नै किन न होऊन् ।

وَمَا كَانَ اسْتِغْفَارُ إِبْرَاهِيمَ لِأَبِيهِ إِلَّا عَنْ مَوْعِدَةٍ وَعَدَهَا إِيَّاهُ فَلَمَّا تَبَيَّنَ لَهُ أَنَّهُ عَدُوٌّ لِلَّهِ تَبَرَّأَ مِنْهُ ۚ إِنَّ إِبْرَاهِيمَ لَأَوَّاهٌ حَلِيمٌ ﴿١١٤﴾

११४) र इब्राहीमले आफ्ना पिताको निम्ति क्षमा याचना गरेको कुरा त एउटा वाचाको कारणले थियो, जुन उनले ऊसँग गरिसकेका थिए, तर जब उनलाई थाहा भयो कि ऊ अल्लाहको शत्रु हो । त त्यसबाट अलग भईहाले । यसमा कुनै सन्देह छैन कि इब्राहीम(अलै.) धेरै कोमल हृदयका र सहनशील थिए ।

وَمَا كَانَ اللَّهُ لِيُضِلَّ قَوْمًا بَعْدَ إِذْ هَدَاهُمْ حَتَّىٰ يُبَيِّنَ لَهُمْ مَا يَتَّقُونَ ۚ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١١٥﴾

११५) र अल्लाह यस्तो छैन कि कुनै क़ौमलाई मार्गदर्शन गरे पछि, मार्ग विचलित गरोस् जबसम्म तिनीहरूलाई त्यो कुरा न भनिहालोस् जसबाट कि उनीहरू पंछिनु पर्छ । निःसन्देह अल्लाह सबै कुराको ज्ञाता छ ।

إِنَّ اللَّهَ لَهُ مُلْكُ السَّمَٰوَٰتِ وَالْأَرْضِ يُحْيِ وَيُمِيتُ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿١١٦﴾

११६) निःसंदेह अल्लाह नै हो जसलाई आकाशहरू र पृथ्वीमाथि अधिपत्य प्राप्त छ । उसैले जिन्दगी प्रदान गर्दछ र मृत्यु दिन्छ, अल्लाह बाहेक तिम्रो अरु कोही मित्र र सहायता दिनेवाला छैन ।

لَقَد تَّابَ اللَّهُ عَلَى النَّبِيِّ وَالْمُهَٰجِرِينَ وَالْأَنصَارِ الَّذِينَ اتَّبَعُوهُ فِي سَاعَةِ الْعُسْرَةِ مِن بَعْدِ مَا كَادَ يَزِيغُ قُلُوبُ فَرِيقٍ مِّنْهُمْ ثُمَّ تَابَ عَلَيْهِمْ إِنَّهُ بِهِمْ رَءُوفٌ رَّحِيمٌ ﴿١١٧﴾

११७) अल्लाहले पैगम्बरमाथि कृपा गरेको छ, र मुहाजिर तथा अन्सारहरूमाथि पनि, जसले संकटको अवस्थामा उहाँको साथ दिए यसको बावजूद कि तिनीहरूमध्ये केहीका हृदयहरू झण्डै विमुख हुने अवस्थामा थिए, फेरि अल्लाहले तिनीहरूमाथि दया गऱ्यो । निःसन्देह ऊ तिनीहरूलाई धेरै माया गर्नेवाला र दयावान छ ।

وَعَلَى الثَّلَٰثَةِ الَّذِينَ خُلِّفُوا حَتَّىٰ إِذَا ضَاقَتْ عَلَيْهِمُ الْأَرْضُ بِمَا رَحُبَتْ وَضَاقَتْ عَلَيْهِمْ أَنفُسُهُمْ وَظَنُّوا أَن لَّا مَلْجَأَ مِنَ اللَّهِ إِلَّا إِلَيْهِ ثُمَّ تَابَ عَلَيْهِمْ لِيَتُوبُوا إِنَّ اللَّهَ هُوَ التَّوَّابُ الرَّحِيمُ ﴿١١٨﴾

११८) र ती तीन जनाको अवस्थामाथि पनि ध्यान दियो जसको कुरा (निर्णय) मुल्तवी (स्थगित) गरिएको थियो, यहाँसम्म कि पृथ्वी आफ्नो विस्तारको बावजूद तिनीहरूको निम्ति साँगुरो भइहाल्यो र तिनीहरूका आत्मा पनि व्याकुल भईहाले र तिनीहरूलाई थाहा भयो कि अल्लाहबाट बच्नको लागि कहीं शरण छैन, शरण छ भने त उसैको नजीकमा छ । अनि (अल्लाहले) तिनीहरू माथि दया गऱ्यो ताकि प्रायश्चित गर्न सकुन् । निःसन्देह अल्लाह नै प्रयाश्चित स्वीकार गर्नेवाला र दयावान छ ।

११९) हे ईमानवालाहरू ! अल्लाहसँग डर मान्ने गर र सत्यवादीहरूको संगतमा रह ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱتَّقُوا۟ ٱللَّهَ وَكُونُوا۟ مَعَ ٱلصَّٰدِقِينَ ﴿١١٩﴾

१२०) मदीनाका बासिन्दाहरू र उनीहरूको छर-छिमेकमा बस्ने ग्रामीणहरूका निम्ति अल्लाहका पैगम्बरलाई छोडेर घरमा बसिरहनु उचित थिएन न त आफ्ना प्राणलाई उनको ज्यान भन्दा प्रिय ठान्नु, यो यस कारण कि अल्लाहको बाटोमा तिनलाई जुन तिर्खा लाग्यो, थकाई लाग्यो वा भोक लाग्यो वा यस्ता ठाउँमा हिंडे जहाँ काफिरहरूलाई रिस उठ्छ वा शत्रुहरूलाई ठीक पारे, यस्ता प्रत्येक कर्ममा तिनीहरूको नाममा एक-एक सत्कर्म लेखियो । निःसन्देह अल्लाहले सत्कर्म गर्नेहरूको प्रतिफल नष्ट पार्दैन ।

مَا كَانَ لِأَهْلِ ٱلْمَدِينَةِ وَمَنْ حَوْلَهُم مِّنَ ٱلْأَعْرَابِ أَن يَتَخَلَّفُوا۟ عَن رَّسُولِ ٱللَّهِ وَلَا يَرْغَبُوا۟ بِأَنفُسِهِمْ عَن نَّفْسِهِۦ ۚ ذَٰلِكَ بِأَنَّهُمْ لَا يُصِيبُهُمْ ظَمَأٌ وَلَا نَصَبٌ وَلَا مَخْمَصَةٌ فِى سَبِيلِ ٱللَّهِ وَلَا يَطَـُٔونَ مَوْطِئًا يَغِيظُ ٱلْكُفَّارَ وَلَا يَنَالُونَ مِنْ عَدُوٍّ نَّيْلًا إِلَّا كُتِبَ لَهُم بِهِۦ عَمَلٌ صَٰلِحٌ ۚ إِنَّ ٱللَّهَ لَا يُضِيعُ أَجْرَ ٱلْمُحْسِنِينَ ﴿١٢٠﴾

१२१) र (यसै प्रकार) तिनीहरूले जे खर्च गरे थोरै अथवा धेरै अथवा (साहसपूर्ण तरिकाले) जति मैदान पार गरे, यी सबै तिनीहरूको नाममा (सत्कर्महरू अन्तर्गत) लेखिन्छन् ताकि अल्लाहले तिनीहरूका कर्महरूको राम्रो प्रतिफल प्रदान गर्न सकोस् ।

وَلَا يُنفِقُونَ نَفَقَةً صَغِيرَةً وَلَا كَبِيرَةً وَلَا يَقْطَعُونَ وَادِيًا إِلَّا كُتِبَ لَهُمْ لِيَجْزِيَهُمُ ٱللَّهُ أَحْسَنَ مَا كَانُوا۟ يَعْمَلُونَ ﴿١٢١﴾

१२२) र यो त हुनै सक्तैन कि मोमिनहरू सबै निस्किहालुन्, त यस्तो किन न गरियोस् कि प्रत्येक ठूलो समूह मध्येबाट एउटा सानो समूह जाने

وَمَا كَانَ ٱلْمُؤْمِنُونَ لِيَنفِرُوا۟ كَآفَّةً ۚ فَلَوْلَا نَفَرَ مِن كُلِّ فِرْقَةٍ مِّنْهُمْ طَآئِفَةٌ لِّيَتَفَقَّهُوا۟ فِى ٱلدِّينِ وَلِيُنذِرُوا۟ قَوْمَهُمْ إِذَا رَجَعُوٓا۟ إِلَيْهِمْ لَعَلَّهُمْ يَحْذَرُونَ ﴿١٢٢﴾

गरोस् ताकि धर्मको शिक्षा ग्रहण गरुन् र आफ्ना समूहतिर फर्केर आएपछि भयको कुरा सुनाउन् ताकि तिनीहरू डरुन् (र आफूलाई दृष्कर्मबाट टाढा राखुन्) ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا قَاتِلُوا الَّذِيْنَ يَلُوْنَكُمْ مِّنَ الْكُفَّارِ وَلْيَجِدُوْا فِيْكُمْ غِلْظَةً ۭ وَاعْلَمُوْٓا اَنَّ اللّٰهَ مَعَ الْمُتَّقِيْنَ ﴿١٢٣﴾

१२३) हे मोमिनहरू ! आफ्ना समीपका काफिरहरूसँग युद्ध गर र तिनीहरूले तिमीमा कठोरता पाउनु पर्छ र जानि राख कि अल्लाह परहेजगारहरूको साथमा छ ।

وَاِذَا مَآ اُنْزِلَتْ سُوْرَةٌ فَمِنْهُمْ مَّنْ يَّقُوْلُ اَيُّكُمْ زَادَتْهُ هٰذِهٖٓ اِيْمَانًا ۚ فَاَمَّا الَّذِيْنَ اٰمَنُوْا فَزَادَتْهُمْ اِيْمَانًا وَّهُمْ يَسْتَبْشِرُوْنَ ﴿١٢٤﴾

१२४) र जब कुनै सूरः अवतरित हुन्छ त केही मुनाफिकहरूले भन्दछन्: कि यस सूरः ले तिमीहरूमध्ये कसको ईमानमा अभिवृद्धि गरेको छ ? हो, जो ईमानवाला छन् तिनीहरूको ईमानमा वृद्धि गरेको छ, र तिनीहरू प्रसन्न हुने गर्दछन् ।

وَاَمَّا الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ فَزَادَتْهُمْ رِجْسًا اِلٰى رِجْسِهِمْ وَمَاتُوْا وَهُمْ كٰفِرُوْنَ ﴿١٢٥﴾

१२५) र जुन मानिसहरूको हृदयमा रोग छ, तिनीहरूका निम्ति फोहरमाथि फोहरको वृद्धि गऱ्यो र तिनीहरू काफिर भएकै अवस्थामा नै मरे ।

اَوَلَا يَرَوْنَ اَنَّهُمْ يُفْتَنُوْنَ فِيْ كُلِّ عَامٍ مَّرَّةً اَوْ مَرَّتَيْنِ ثُمَّ لَا يَتُوْبُوْنَ وَلَا هُمْ يَذَّكَّرُوْنَ ﴿١٢٦﴾

१२६) र के यिनीहरूले देख्दैनन् कि यिनीहरू प्रत्येक वर्ष एक दुई पटक कुनै न कुनै संकटमा पर्ने गर्दछन्, तै पनि प्रायश्चित गर्दैनन् र न उपदेश ग्रहण गर्दछन् ।

وَاِذَا مَآ اُنْزِلَتْ سُوْرَةٌ نَّظَرَ بَعْضُهُمْ اِلٰى بَعْضٍ ۭ هَلْ يَرٰىكُمْ مِّنْ اَحَدٍ ثُمَّ انْصَرَفُوْا ۭ صَرَفَ اللّٰهُ قُلُوْبَهُمْ بِاَنَّهُمْ قَوْمٌ لَّا يَفْقَهُوْنَ ﴿١٢٧﴾

१२७) र जब कुनै सूरः अवतरित हुन्छ त एक अर्का तिर हेर्न थाल्दछन् (र सोध्छन्) : "के कसैले तिमीलाई

देख्दछ? फेरि हिंडी हाल्छन् । अल्लाहले तिनीहरूको हृदयलाई मोडि दिएको छ, किनभने यिनीहरू यस्ता मानिस हुन् जसले बुद्धिले काम लिंदैनन् ।

لَقَدْ جَآءَكُمْ رَسُولٌ مِّنْ أَنفُسِكُمْ عَزِيزٌ عَلَيْهِ مَا عَنِتُّمْ حَرِيصٌ عَلَيْكُم بِٱلْمُؤْمِنِينَ رَءُوفٌ رَّحِيمٌ ﴿١٢٨﴾

१२८) (हे मानिसहरू हो !) तिमीहरूको माझमा तिमीहरू मध्येबाटै एउटा पैगम्बर आएका छन् । तिम्रो पीडाबाट उनी दुःखी हुन्छन् र तिम्रा भलोको निम्ति चिन्तित रहन्छन्, र ईमानवालाहरूलाई निकै माया गर्ने र दयालु छन् ।

فَإِن تَوَلَّوْا فَقُلْ حَسْبِيَ ٱللَّهُ لَآ إِلَٰهَ إِلَّا هُوَ عَلَيْهِ تَوَكَّلْتُ وَهُوَ رَبُّ ٱلْعَرْشِ ٱلْعَظِيمِ ﴿١٢٩﴾

१२९) तर यदि तिनीहरू विमुख हुन्छन् भने, भनिदिनुस् कि अल्लाह मेरो निम्ति प्रयाप्त छ । उस बाहेक अरु कोही पूजा योग्य छैन । उसैमाथि मेरो भरोसा छ, र ऊ ठूलो अर्श (सिंहासन) को स्वामी हो ।



# सूरतु यूनुस-१०




सूरतु यूनुस मक्की छ, यसमा १०९ आयत र ११ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो बडो कृपालु, अत्यन्त दयावान छ ।**

الٓرٰ ۚ تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْحَكِيْمِ ①

१) अलिफ-लाम-रा, यो ठूलो बिवेचनाको किताबका आयतहरू हुन् ।

اَكَانَ لِلنَّاسِ عَجَبًا اَنْ اَوْحَيْنَاۤ اِلٰى رَجُلٍ مِّنْهُمْ اَنْ اَنْذِرِ النَّاسَ وَبَشِّرِ الَّذِيْنَ اٰمَنُوْۤا اَنَّ لَهُمْ قَدَمَ صِدْقٍ عِنْدَ رَبِّهِمْ ؕ قَالَ الْكٰفِرُوْنَ اِنَّ هٰذَا لَسٰحِرٌ مُّبِيْنٌ ②

२) के मानिसहरूलाई आश्चर्य लाग्यो कि हामीले तिनीहरूमध्येबाट नै एउटा मानिसलाई आदेश पठायौं कि मानिसहरूलाई चेतावनी सुनाई देऊ र ईमान भएकाहरूलाई शुभ-सन्देश दिइहाल कि उनीहरूको पालनकर्ता कहाँ उनीहरूलाई पूरा प्रतिफल र उच्च स्थान प्राप्त हुनेछ । काफिरहरूले भने कि यो मानिस स्पष्ट रूपमा जादूगर हो ।

اِنَّ رَبَّكُمُ اللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ يُدَبِّرُ الْاَمْرَ ؕ مَا مِنْ شَفِيْعٍ اِلَّا مِنْۢ بَعْدِ اِذْنِهٖ ؕ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ فَاعْبُدُوْهُ ؕ اَفَلَا تَذَكَّرُوْنَ ③

३) निःसन्देह तिम्रो पालनकर्ता त अल्लाह नै हो, जसले आकाश र पृथ्वीलाई छ (६) दिनमा सृष्टि गर्‍यो । अनि आफू सिंहासनमाथि उच्च भयो । उसैले प्रत्येक कुराको प्रबन्ध र सञ्चालन गर्दछ । कसैले (उसको समीपमा) उसको अनुमति प्राप्त न गरिकन सिफारिश गर्न सक्तैन । यही अल्लाह तिम्रो पालनकर्ता हो, तसर्थ उसैको पूजा गर । के तिमीहरू अझै उपदेश ग्रहण गर्दैनौ ।

४) तिमी सबैले फर्केर उसैको समीप जानु छ । अल्लाहको वाचा सत्य छ । निःसन्देह उसैले सृष्टिको प्रक्रिया प्रारम्भ गर्दछ र निरन्तरता प्रदान गर्दछ ताकि ईमानवाला र सत्कर्म गर्नेहरूलाई न्यायोचित रूपले पुरस्कार प्रदान गर्न सकोस् । र जो काफिर छन् तिनीहरूको निम्ति अत्यन्त उम्ली रहेको पिउने पानी र कष्टदायक सजाय हुनेछ त्यस इन्कारका बदलामा जो उनीहरूले गरे ।

إِلَيْهِ مَرْجِعُكُمْ جَمِيعًا ۖ وَعْدَ اللَّهِ حَقًّا ۚ إِنَّهُ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيدُهُ لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ بِالْقِسْطِ ۚ وَالَّذِينَ كَفَرُوا لَهُمْ شَرَابٌ مِنْ حَمِيمٍ وَعَذَابٌ أَلِيمٌ بِمَا كَانُوا يَكْفُرُونَ ④

५) ऊ अल्लाह नै त हो जसले सूर्यलाई प्रकाशमान र चन्द्रलाई ज्योतिमय बनायो र यसको लागि विभिन्न स्थितिहरू स्थापित गऱ्यो, ताकि तिमीले वर्षहरूको गणना र हिसाब थाहा पाउने गर । यी सबै कुराहरू अल्लाहले सत्यका साथ सृष्टि गरेको छ । बुझ्नेहरूका लागि उसले आफ्ना आयतहरू स्पष्ट रूपमा वर्णन गर्दैछ ।

هُوَ الَّذِي جَعَلَ الشَّمْسَ ضِيَاءً وَالْقَمَرَ نُورًا وَقَدَّرَهُ مَنَازِلَ لِتَعْلَمُوا عَدَدَ السِّنِينَ وَالْحِسَابَ ۚ مَا خَلَقَ اللَّهُ ذَٰلِكَ إِلَّا بِالْحَقِّ ۚ يُفَصِّلُ الْآيَاتِ لِقَوْمٍ يَعْلَمُونَ ⑤

६) निःसन्देह रात र दिनको एक अर्कापछि आगमन र जुन कुराहरू अल्लाहले आकाश र पृथ्वीमा सृष्टि गरेको छ सबैमा अल्लाहसँग डर मान्नेहरूका लागि निशानीहरू छन् ।

إِنَّ فِي اخْتِلَافِ اللَّيْلِ وَالنَّهَارِ وَمَا خَلَقَ اللَّهُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ لَآيَاتٍ لِقَوْمٍ يَتَّقُونَ ⑥

७) जसले हामीसँग साक्षात्कार हुने कुरामा आशा राखदैनन् र सांसारिक जीवनमा सन्तुष्ट छन् र हाम्रा

إِنَّ الَّذِينَ لَا يَرْجُونَ لِقَاءَنَا وَرَضُوا بِالْحَيَاةِ الدُّنْيَا وَاطْمَأَنُّوا بِهَا وَالَّذِينَ هُمْ عَنْ آيَاتِنَا غَافِلُونَ ⑦

निशानीहरू तिर ध्यान दिइराखेका छैनन् ।

८) तिनीहरूको बासस्थान, तिनीहरूको क्रियाकलापको कारण, नर्क (हुने) छ ।

أُولَٰٓئِكَ مَأْوَىٰهُمُ ٱلنَّارُ بِمَا كَانُوا۟ يَكْسِبُونَ ⑧

९) निःसन्देह जुन मानिसहरूले ईमान ल्याए र सत्कर्म गरे तिनीहरूलाई पालनकर्ताले, तिनीहरूको ईमानको कारण मार्ग दिखाउने छन् । वरदानका बगैंचाहरूमा जसका मुनि नहरहरू बगिराखेका हुनेछन् ।

إِنَّ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ يَهْدِيهِمْ رَبُّهُم بِإِيمَٰنِهِمْ ۖ تَجْرِى مِن تَحْتِهِمُ ٱلْأَنْهَٰرُ فِى جَنَّٰتِ ٱلنَّعِيمِ ⑨

१०) उनीहरूको मुखबाट (प्रार्थना) उच्चारित हुनेछ अल्लाह गौरवपूर्ण छ र आपसमा भेटको बेला दुआ "सलामुन् अलैकुम" हुनेछ र तिनीहरूको अंतिम भनाई यो हुनेछ कि सम्पूर्ण ब्रह्माण्डको स्वामी र पालनकर्तालाई सम्पूर्ण प्रशंसा छ ।

دَعْوَىٰهُمْ فِيهَا سُبْحَٰنَكَ ٱللَّهُمَّ وَتَحِيَّتُهُمْ فِيهَا سَلَٰمٌ ۚ وَءَاخِرُ دَعْوَىٰهُمْ أَنِ ٱلْحَمْدُ لِلَّهِ رَبِّ ٱلْعَٰلَمِينَ ⑩

११) र यदि अल्लाहले मानिसहरूको नोक्सानी गर्न हतार गर्ने भए, जुनप्रकारले तिनीहरूले फाइदाको निम्ति हतार गर्दछन्, भने उनको वचन उहिले नै पूरा भइसक्ने थियो । तसर्थ जुन मानिसहरूलाई हामीसम्म आउने कुराको यकीन छैन, त्यस्तालाई हामीले त्यसै छाडी दिन्छौं, ताकि आफ्ना अटेरिपनामा भौतारि रहुन् ।

وَلَوْ يُعَجِّلُ ٱللَّهُ لِلنَّاسِ ٱلشَّرَّ ٱسْتِعْجَالَهُم بِٱلْخَيْرِ لَقُضِىَ إِلَيْهِمْ أَجَلُهُمْ ۖ فَنَذَرُ ٱلَّذِينَ لَا يَرْجُونَ لِقَآءَنَا فِى طُغْيَٰنِهِمْ يَعْمَهُونَ ⑪

وَإِذَا مَسَّ الْإِنسَانَ الضُّرُّ دَعَانَا لِجَنبِهِ أَوْ قَاعِدًا أَوْ قَائِمًا فَلَمَّا كَشَفْنَا عَنْهُ ضُرَّهُ مَرَّ كَأَن لَّمْ يَدْعُنَا إِلَىٰ ضُرٍّ مَّسَّهُ ۚ كَذَٰلِكَ زُيِّنَ لِلْمُسْرِفِينَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٢﴾

१२) र मानिसलाई जब कुनै कष्ट पुग्छ त पल्टेको, बसेको र उभेको (अवस्थामा) हामीलाई पुकार्दछ । तर जब हामीले उसको कष्ट हटाइ दिन्छौं त यस किसिमबाट आफ्नो बाटो लाग्छ मानौं त्यसले हामीलाई कहिल्यै पुकारेकै थिएन। यस प्रकार सीमा उल्लंघनकारीहरूलाई तिनीहरूका क्रियाकलापहरूलाई आकर्षक देखाइएको छ ।

وَلَقَدْ أَهْلَكْنَا الْقُرُونَ مِن قَبْلِكُمْ لَمَّا ظَلَمُوا ۙ وَجَاءَتْهُمْ رُسُلُهُم بِالْبَيِّنَاتِ وَمَا كَانُوا لِيُؤْمِنُوا ۚ كَذَٰلِكَ نَجْزِي الْقَوْمَ الْمُجْرِمِينَ ﴿١٣﴾

१३) र तिमी भन्दा अघि हामीले अनेक समूहहरूलाई नष्ट गरिसकेका छौं, जब तिनीहरूले अत्याचार गरे र तिनीहरूको समीपमा पैग़म्बरले स्पष्ट प्रमाणहरू लिएर आए तर तिनीहरूले ईमान ल्याउनेवाला थिएनन् । हामीले अपराधीहरूलाई यस्तै सजाय दिने गर्दछौं ।

ثُمَّ جَعَلْنَاكُمْ خَلَائِفَ فِي الْأَرْضِ مِن بَعْدِهِمْ لِنَنظُرَ كَيْفَ تَعْمَلُونَ ﴿١٤﴾

१४) अनि हामीले तिनीहरू पछि तिमीलाई धरतीको उत्तराधिकारी बनायौं ताकि हामीले हेर्न सकौं कि तिमीले कसरी काम गर्दछौ ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ ۙ قَالَ الَّذِينَ لَا يَرْجُونَ لِقَاءَنَا ائْتِ بِقُرْآنٍ غَيْرِ هَٰذَا أَوْ بَدِّلْهُ ۚ قُلْ مَا يَكُونُ لِي أَنْ أُبَدِّلَهُ مِن تِلْقَاءِ نَفْسِي ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰ إِلَيَّ ۖ إِنِّي أَخَافُ إِنْ عَصَيْتُ رَبِّي عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٥﴾

१५) र जब तिनीहरूलाई हाम्रा आयतहरू पढेर सुनाइन्छ, जुन बिल्कुल स्पष्ट छन् त जसलाई हामीसँग साक्षात्कारको विश्वास छैन, तिनीहरूले भन्दछन्: कि यस बाहेक अरु कुनै कुरआन (बनाएर) ल्याउनुस् वा यसलाई परिवर्तित

गरिहाल्नुस् । तपाई भनिदिनुस् कि मलाई आफ्नो तर्फबाट यसमा परिवर्तन गर्ने अधिकार छैन । म त, त्यही आदेशको पालन गर्दछु जुनकि मलाई उहाँ मार्फत पठाईन्छ । यदि मैले आफ्नो पालनकर्ताको आदेश उल्लंघन गर्ने भए मलाई ठूलो दिनको सजायको भय छ ।

قُلْ لَّوْ شَآءَ اللّٰهُ مَا تَلَوْتُهٗ عَلَيْكُمْ وَلَآ اَدْرٰىكُمْ بِهٖ ۖ فَقَدْ لَبِثْتُ فِيْكُمْ عُمُرًا مِّنْ قَبْلِهٖ ؕ اَفَلَا تَعْقِلُوْنَ ﴿١٦﴾

१६) तपाई यो पनि भनिदिनुस् कि यदि अल्लाहले चाहेको भए, न त म यो (किताब) तिमीलाई पढेर सुनाउँथे र न उसैले तिमीलाई यस सम्बन्धमा अवगत गराउने थियो । यसभन्दा अगाडि म तिमीहरूको माँझमा (सम्पूर्ण) जीवन अवधि बिताउँदै आइराखेको छु । र (कहिल्यै यस्तो भनेको छैन) के तिमीले यो कुरा बुझ्दैनौ ?

فَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ كَذَّبَ بِاٰيٰتِهٖ ؕ اِنَّهٗ لَا يُفْلِحُ الْمُجْرِمُوْنَ ﴿١٧﴾

१७) तसर्थ त्यो भन्दा ठूलो अत्याचारी को हुन सक्छ, जसले अल्लाहको बारेमा झूठो भन्छ वा उसको आयतहरूलाई असत्य ठान्दछ । निःसन्देह यस्ता अपराधीहरू सफलता पाउने छैनन् ।

وَيَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَضُرُّهُمْ وَلَا يَنْفَعُهُمْ وَيَقُوْلُوْنَ هٰٓؤُلَآءِ شُفَعَآؤُنَا عِنْدَ اللّٰهِ ؕ قُلْ اَتُنَبِّـُٔوْنَ اللّٰهَ بِمَا لَا يَعْلَمُ فِى السَّمٰوٰتِ وَلَا فِى الْاَرْضِ ؕ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿١٨﴾

१८) र यी (मानिसहरू) अल्लाह बाहेक यस्ता कुराहरूको पूजा गर्दछन्, जसले तिनीहरूको न केही बिगार्न सक्तछन् र न सपार्न सक्तछन् र भन्दछन् कि यिनीहरूले अल्लाहका

समीपमा हाम्रो सिफारिश गर्ने छन्। तपाई भनिदिनुस् कि के तिमीले अल्लाहलाई यस्तो कुरा बारे भन्दछौ, जसको जानकारी उसलाई छैन र त्यसको अस्तित्व आकाशहरूमा र पृथ्वीमा छैन। ऊ पवित्र छ, र तिनीहरूको शिर्क (अल्लाहसँग अरुलाई दाँज्नु) भन्दा धेरै उच्च छ।

وَمَا كَانَ النَّاسُ إِلَّا أُمَّةً وَاحِدَةً فَاخْتَلَفُوا ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِن رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ فِيمَا فِيهِ يَخْتَلِفُونَ ﴿١٩﴾

१९) र सबै मानिसहरू (अघि) एउटै समुदाय थिए। पछि विवादको सृजना भयो र यदि एउटा कुरो जुन तिम्रो पालनकर्ताबाट पहिला भइसकेको छ, न भएको भए, जुन कुरामा तिनीहरूले विवाद गरिराखेका छन्, त्यसमा तिनीहरूको निर्णय भई सक्ने थियो।

وَيَقُولُونَ لَوْلَا أُنزِلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۖ فَقُلْ إِنَّمَا الْغَيْبُ لِلَّهِ فَانتَظِرُوا إِنِّي مَعَكُم مِّنَ الْمُنتَظِرِينَ ﴿٢٠﴾

२०) र यिनीहरूले भन्दछन् कि उनीहरू माथि उसको पालनहारबाट कुनै निशानी किन आएन। भनिदिनुस् कि गैब (अदृश्य)को ज्ञान त मात्र अल्लाहलाई नै छ, अतः तिमीले प्रतिक्षा गर। म पनि तिम्रो साथमा प्रतिक्षा गर्दछु।

وَإِذَا أَذَقْنَا النَّاسَ رَحْمَةً مِّن بَعْدِ ضَرَّاءَ مَسَّتْهُمْ إِذَا لَهُم مَّكْرٌ فِي آيَاتِنَا ۚ قُلِ اللَّهُ أَسْرَعُ مَكْرًا ۚ إِنَّ رُسُلَنَا يَكْتُبُونَ مَا تَمْكُرُونَ ﴿٢١﴾

२१) र जब हामीले मानिसहरूलाई दुःख पुगेपछि आफ्नो दयाले सुखको स्वाद चखाउँछौ, त्यति खेर तिनीहरूले हाम्रा आयतहरूको बारेमा षड्यन्त्र गर्न थाल्छन्। तपाई भनिदिनुस् कि

अल्लाहले छिट्टै आफ्नो योजना सम्पन्न गर्नेवाला छ र जुन षड्यन्त्रपूर्ण योजना तिमीले बनाई राखेका छौ, हाम्रा फरिश्ताहरू ती सबै लेखिराखेका छन् ।

२२) उही अल्लाह हो, जसले तिमीलाई जंगल र समुन्द्रमा हिंडने योग्य बनाएको छ, यहाँसम्म कि जब तिमीहरू डुङ्गाहरूमा (सवार) हुन्छौ र ती डुङ्गाहरूले त्यसमा यात्रा गर्नेहरूलाई लिएर अनुकूल हावाको मद्दतले हिंड्न थाल्छन् र तिनीहरू त्यसबाट निकै आनन्दित हुन्छन्, अनि एउटा तूफानी हावा चल्न थाल्छ र चारैतिरबाट तरहरू उठ्न थाल्दछन् र तिनीहरूलाई लाग्दछ कि (अहिले त) तरङ्गहरूबाट नराम्रोसंग घेराइसकेका छन्, त्यतिखेर अल्लाहलाई नै शुद्ध नीयतले पुकार्दछन् कि यदि हामीलाई यसबाट मुक्त गराइदिन्छौ भने हामी धेरै आभारी हुने छौं ।

هُوَ الَّذِىْ يُسَيِّرُكُمْ فِى الْبَرِّ وَالْبَحْرِ ؕ حَتّٰۤى اِذَا كُنْتُمْ فِى الْفُلْكِ ۚ وَجَرَيْنَ بِهِمْ بِرِيْحٍ طَيِّبَةٍ وَّفَرِحُوْا بِهَا جَآءَتْهَا رِيْحٌ عَاصِفٌ وَّجَآءَهُمُ الْمَوْجُ مِنْ كُلِّ مَكَانٍ وَّظَنُّوْۤا اَنَّهُمْ اُحِيْطَ بِهِمْ ۙ دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۚ لَئِنْ اَنْجَيْتَنَا مِنْ هٰذِهٖ لَنَكُوْنَنَّ مِنَ الشّٰكِرِيْنَ ﴿٢٢﴾

२३) तर जब अल्लाहले तिनीहरूलाई बचाइदिन्छ तब तिनीहरूले तुरुन्तै पृथ्वीमा त्यसै घृष्टतापूर्वक उपद्रव गर्न थाल्छन् । मानिसहरू हो ! तिम्रो यो उद्दण्डता तिम्रो लागि नै हानिकारक हुनेछ । सांसारिक जीवनका केही फाइदा छन् तर फेरि तिमीले हाम्रै समीपमा फर्केर

فَلَمَّاۤ اَنْجٰىهُمْ اِذَا هُمْ يَبْغُوْنَ فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ ؕ يٰۤاَيُّهَا النَّاسُ اِنَّمَا بَغْيُكُمْ عَلٰۤى اَنْفُسِكُمْ ۙ مَّتَاعَ الْحَيٰوةِ الدُّنْيَا ۫ ثُمَّ اِلَيْنَا مَرْجِعُكُمْ فَنُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٢٣﴾

आउनु पर्नेछ अनि हामीले तिमीलाई तिमीले गरेको सबै देखाउने छौं ।

إِنَّمَا مَثَلُ الْحَيٰوةِ الدُّنْيَا كَمَآءٍ اَنْزَلْنٰهُ مِنَ السَّمَآءِ
فَاخْتَلَطَ بِهٖ نَبَاتُ الْاَرْضِ مِمَّا يَاْكُلُ النَّاسُ
وَالْاَنْعَامُ حَتّٰٓى اِذَآ اَخَذَتِ الْاَرْضُ زُخْرُفَهَا وَازَّيَّنَتْ
وَظَنَّ اَهْلُهَآ اَنَّهُمْ قٰدِرُوْنَ عَلَيْهَآ اَتٰهَآ اَمْرُنَا
لَيْلًا اَوْ نَهَارًا فَجَعَلْنٰهَا حَصِيْدًا كَاَنْ لَّمْ
تَغْنَ بِالْاَمْسِ كَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ
يَّتَفَكَّرُوْنَ ﴿٢٤﴾

२४) संसारको जीवनको अवस्था यस्तो छ जस्तो कि हामीले आकाशबाट पानी बर्सायौं, अनि त्यसलाई पृथ्वीमा मिसाई त्यसबाट वनस्पति उब्जायौं, जसलाई मानिस र पशुहरूले खान्छन् । यहाँसम्म कि पृथ्वी वनस्पतिले मनोरम र विभूषित भइहाल्यौ र मानिसहरूले ठान्नथाले कि त्यसमाथि तिनीहरूको पूरा अधिकार भइसक्यो । अनि एक्कासि राति वा दिनमा हाम्रो आदेश आइपुग्यो, अनि हामीले त्यसलाई काटेर यस्तो गरिहाल्यौं जस्तो कि त्यहाँ हिजोसम्म केही छँदै थिएन । जो चिन्तन गर्ने मानिसहरू छन् तिनीहरूको निम्ति यसरी नै हामीले आफ्ना निशानीहरू खुलस्त रूपमा वर्णन गर्दछौं ।

وَاللّٰهُ يَدْعُوْٓا اِلٰى دَارِ السَّلٰمِ وَيَهْدِيْ مَنْ يَّشَآءُ
اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٢٥﴾

२५) र अल्लाह सलामती (भलाई)को घरतिर तिमीलाई बोलाउँछ र जसलाई चाहन्छ सोझो बाटो देखाउँछ ।

لِلَّذِيْنَ اَحْسَنُوا الْحُسْنٰى وَزِيَادَةٌ وَلَا يَرْهَقُ
وُجُوْهَهُمْ قَتَرٌ وَّلَا ذِلَّةٌ اُولٰٓئِكَ اَصْحٰبُ الْجَنَّةِ هُمْ
فِيْهَا خٰلِدُوْنَ ﴿٢٦﴾

२६) जसले असल काम गरे तिनीहरूको निम्ति राम्रो प्रतिफल छ र (केही) बढी पनि । र तिनीहरूको अनुहार न अध्यारो हुनेछ र न त अपमानित हुने छ । यिनीहरू जन्नत बासी

हुनेछन् र तिनीहरू सदाको लागि त्यहाँ बास गर्ने छन् ।

२७) र जसले नराम्रा काम गरे, तिनीहरूको दुष्कर्मको प्रतिफल पनि त्यस्तै नै हुनेछ र अपमानले तिनीहरूको अनुहारलाई ढाक्ने छ, र कोही पनि तिनीहरूलाई अल्लाहको क्रोधबाट बचाउने वाला हुनेछैन । तिनीहरूका अनुहारको कालोपनको अवस्था यस्तो हुनेछ जस्तो कालो रातिका अनेक परतहरूबाट छोपिएका छन् । यिनीहरू नर्कमा जाने हुन्, र सधैं त्यसैमा रहने छन् ।

وَالَّذِيْنَ كَسَبُوا السَّيِّاٰتِ جَزَآءُ سَيِّئَةٍۢ بِمِثْلِهَا ۙ وَتَرْهَقُهُمْ ذِلَّةٌ ؕ مَا لَهُمْ مِّنَ اللّٰهِ مِنْ عَاصِمٍ ۚ كَاَنَّمَآ اُغْشِيَتْ وُجُوْهُهُمْ قِطَعًا مِّنَ الَّيْلِ مُظْلِمًا ؕ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿٢٧﴾

२८) र त्यो दिन पनि वर्णन योगय छ जुनदिन तिनीहरूलाई एकत्रित गर्ने छौं । अनि हामीले मुश्रिकहरूसित भन्ने छौं: कि तिमी र तिमीले ठहऱ्याएका साझेदारहरू आ-आफ्ना ठाउँहरूमा उभी राख । अनि हामीले तिनीहरूमा मतभेद गराई दिन्छौं तिनीहरूका साझेदारहरूले भन्ने छन्: कि तिमीले हामीलाई त पूज्ने गर्दैनथ्यौ ।

وَيَوْمَ نَحْشُرُهُمْ جَمِيْعًا ثُمَّ نَقُوْلُ لِلَّذِيْنَ اَشْرَكُوْا مَكَانَكُمْ اَنْتُمْ وَشُرَكَآؤُكُمْ ۚ فَزَيَّلْنَا بَيْنَهُمْ وَقَالَ شُرَكَآؤُهُمْ مَّا كُنْتُمْ اِيَّانَا تَعْبُدُوْنَ ﴿٢٨﴾

२९) हाम्रो तिम्रो बीचमा अल्लाह नै साक्षीको रूपमा पर्याप्त छ । हामी तिम्रो पूजाबाट अनभिज्ञ थियौं ।

فَكَفٰى بِاللّٰهِ شَهِيْدًۢا بَيْنَنَا وَبَيْنَكُمْ اِنْ كُنَّا عَنْ عِبَادَتِكُمْ لَغٰفِلِيْنَ ﴿٢٩﴾

३०) त्यहाँ प्रत्येक मानिसले आफ्नो पहिलाका कार्यहरूको निरीक्षण गर्नेछ

هُنَالِكَ تَبْلُوْا كُلُّ نَفْسٍ مَّآ اَسْلَفَتْ وَرُدُّوْٓا اِلَى اللّٰهِ مَوْلٰىهُمُ الْحَقِّ وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَفْتَرُوْنَ ﴿٣٠﴾

र तिनीहरूले आफ्ना वास्तविक स्वामीतिर फर्कने छन्, र तिनीहरूले गढेका सबै झूठा कुराहरू हराउने छन् ।

قُلْ مَنْ يَّرْزُقُكُمْ مِّنَ السَّمَآءِ وَالْاَرْضِ اَمَّنْ يَّمْلِكُ
السَّمْعَ وَالْاَبْصَارَ وَمَنْ يُّخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ
وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَمَنْ يُّدَبِّرُ الْاَمْرَ ۚ
فَسَيَقُوْلُوْنَ اللّٰهُ ۚ فَقُلْ اَفَلَا تَتَّقُوْنَ ﴿٣١﴾

३१) (तिनीहरूसँग) तपाईले भन्नुस् कि तिमीलाई आकाश र जमीनबाट जीविका कसले प्रदान गर्दछ वा तिम्रो कान र आँखा माथि कसको अख्तियारी छ र मृतकबाट प्राणवाला कसले बनाउँछ र प्राणवानबाट प्राणहीन कसले गर्दछ ? र त्यो को हो जसले सबै कामको योजना बनाउँछ ? त तिनीहरूले अवश्य भन्ने छन् ''अल्लाह'', तसर्थ भन्नुस् कि त्यसो भए तिमी (अल्लाहसँग) किन डर मान्दैनौ ?

فَذٰلِكُمُ اللّٰهُ رَبُّكُمُ الْحَقُّ ۚ فَمَاذَا بَعْدَ الْحَقِّ اِلَّا الضَّلٰلُ ۚ
فَاَنّٰى تُصْرَفُوْنَ ﴿٣٢﴾

३२) यही अल्लाह नै त तिम्रो वास्तविक पालनहार हो, र सत्य कुरा प्रकट भइसकेपछि पथ भ्रष्टता बाहेक अरु बाँकी नै के रहन्छ र ? तसर्थ तिमी किन असल बाटोबाट टाढिदै गएका छौ ?

كَذٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى الَّذِيْنَ
فَسَقُوْٓا اَنَّهُمْ لَا يُؤْمِنُوْنَ ﴿٣٣﴾

३३) यस प्रकार अल्लाहका यी शब्दहरू उल्लंघनकारीहरू माथी प्रमाणित भइसकेको छ, कि उनीहरू ईमान ल्याउने छैनन् ।

قُلْ هَلْ مِنْ شُرَكَآئِكُمْ مَّنْ يَّبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ ۚ
قُلِ اللّٰهُ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ فَاَنّٰى تُؤْفَكُوْنَ ﴿٣٤﴾

३४) तपाईले भन्नुस् कि तिम्रा साझेदारहरूमध्ये यस्तो को छ ? जसले पहिलो पटक पनि सृष्टिको

प्रारम्भ गरोस् र त्यसलाई दोस्रो पटक पनि दोहोरयाउँछ । तपाईले भनिदिनुस् कि त्यो अल्लाह नै हो जसले सृष्टिको शुरूआत गर्दछ र त्यसको पुनरावृति पनि गर्दछ, तसर्थ तिमी कहाँ पथ भ्रमित भई राखेका छौ ?

३५) तपाई भन्नुस् कि तिम्रा साझेदार-हरूमध्ये यस्तो कोही छ जसले सत्यको मार्ग देखाउन सक्तछ ? भनिदिनुस् कि अल्लाहले नै सत्यको मार्ग देखाउँछ। अनि के जसले सत्यको मार्ग देखाउँछ, त्यो यस योग्य छ कि त्यसको अनुशरण गरियोस् अथवा त्यो जसलाई जबसम्म मार्ग न देखाइयोस् तबसम्म आफै बाटो पाउँदैन ? तसर्थ तिमीलाई के भएको छ, तिमी कस्तो फैसला गर्दछौ ?

قُلۡ هَلۡ مِن شُرَكَآئِكُم مَّن يَهۡدِيٓ إِلَى ٱلۡحَقِّۚ قُلِ ٱللَّهُ يَهۡدِي لِلۡحَقِّۗ أَفَمَن يَهۡدِيٓ إِلَى ٱلۡحَقِّ أَحَقُّ أَن يُتَّبَعَ أَمَّن لَّا يَهِدِّيٓ إِلَّآ أَن يُهۡدَىٰۖ فَمَا لَكُمۡ كَيۡفَ تَحۡكُمُونَ ﴿٣٥﴾

३६) र तिनीहरूमध्ये धेरै जसोले मात्र अनुमानको भरमा हिड्दैछन् र सत्यको अगाडि अनुमानको कुनै उपादेयता छैन निःसन्देह अल्लाह तिम्रा कामहरूलाई जान्दछ ।

وَمَا يَتَّبِعُ أَكۡثَرُهُمۡ إِلَّا ظَنًّاۚ إِنَّ ٱلظَّنَّ لَا يُغۡنِي مِنَ ٱلۡحَقِّ شَيۡـًٔاۚ إِنَّ ٱللَّهَ عَلِيمُۢ بِمَا يَفۡعَلُونَ ﴿٣٦﴾

३७) र यो कुरआन यस्तो छैन कि अल्लाह बाहेक अरु कसैले आफ्नो तर्फबाट रचेर ल्याउन सकोस् । अपितु यसले जुन ग्रन्थहरू यस भन्दा अगाडिका छन् तिनीहरूलाई प्रमाणित गर्दछ र आवश्यक

وَمَا كَانَ هَٰذَا ٱلۡقُرۡءَانُ أَن يُفۡتَرَىٰ مِن دُونِ ٱللَّهِ وَلَٰكِن تَصۡدِيقَ ٱلَّذِي بَيۡنَ يَدَيۡهِ وَتَفۡصِيلَ ٱلۡكِتَٰبِ لَا رَيۡبَ فِيهِ مِن رَّبِّ ٱلۡعَٰلَمِينَ ﴿٣٧﴾

निर्देशनहरूको यसमा विवरण छ। यसमा कुनै शंका छैन कि यो पालनकर्ताबाट प्रदान गरिएको हो ।

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ فَأْتُوا بِسُورَةٍ مِّثْلِهِ وَادْعُوا مَنِ اسْتَطَعْتُم مِّن دُونِ اللَّهِ إِن كُنتُمْ صَادِقِينَ ﴿٣٨﴾

३८) के यिनीहरूले यो भन्दछन्: पैगम्बरले त्यसलाई आफ्नो तर्फबाट रचेका हुन् । भनिदिनुस् कि यदि साँचो हौ भने तिमीले पनि यस्तै प्रकारको एक सूरः बनाएर ल्याऊ र अल्लाह बाहेक जसलाई तिमी बोलाउन सक्छौ बोलाइहाल यदि तिमी साँचो छौ ।

بَلْ كَذَّبُوا بِمَا لَمْ يُحِيطُوا بِعِلْمِهِ وَلَمَّا يَأْتِهِمْ تَأْوِيلُهُ ۚ كَذَٰلِكَ كَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ ۖ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الظَّالِمِينَ ﴿٣٩﴾

३९) वास्वविकता यो हो कि जुन कुराको ज्ञानमाथि नियन्त्रण प्राप्त गर्न सकेनन् त्यसलाई झूठा भनी आरोप लगाए, र यसैले यसको सत्यता उनीमाथि प्रकट नै भएको छैन । यसैगरी जो मानिसहरू यिनीहरूभन्दा पहिला थिए तिनीहरूले पनि झूठ भनेका थिए, तसर्थ हेर्नुस् अत्याचारीहरूको परिणाम कस्तो भयो ।

وَمِنْهُم مَّن يُؤْمِنُ بِهِ وَمِنْهُم مَّن لَّا يُؤْمِنُ بِهِ ۚ وَرَبُّكَ أَعْلَمُ بِالْمُفْسِدِينَ ﴿٤٠﴾

४०) र यिनीहरूमध्ये केही त यस्ता छन् जसले कि यसमाथि ईमान ल्याउने छन् र केही यस्ता छन् जसले कि यसमाथि ईमान ल्याउने छैनन् । र तपाईको पालनकर्ताले उपद्रवीहरूलाई राम्ररी जान्दछ ।

وَإِن كَذَّبُوكَ فَقُل لِّي عَمَلِي وَلَكُمْ عَمَلُكُمْ ۖ أَنتُم بَرِيئُونَ مِمَّا أَعْمَلُ وَأَنَا بَرِيءٌ مِّمَّا تَعْمَلُونَ ﴿٤١﴾

४१) र यदि यिनीहरूले तपाईलाई झूठा भन्दछन् भने भनीदिनुस् कि मलाई मेरो कर्म र तिमीलाई तिम्रो कर्म छ। तिमी मेरा कर्महरूको उत्तरदायी

छैनौ र म तिम्रा कर्महरूको जवाफदेही छैन ।

وَمِنْهُم مَّن يَسْتَمِعُونَ إِلَيْكَ ۚ أَفَأَنتَ تُسْمِعُ الصُّمَّ وَلَوْ كَانُوا لَا يَعْقِلُونَ ﴿٤٢﴾

४२) र यिनीहरूमध्ये केही यस्ता छन्, जसले तपाईतिर कान थापि बसेका छन् । त के तपाईले बहिराहरूलाई सुनाउनु हुन्छ, यद्यपि तिनीहरू केही पनि बुझ्ने गर्दैनन् ।

وَمِنْهُم مَّن يَنظُرُ إِلَيْكَ ۚ أَفَأَنتَ تَهْدِي الْعُمْيَ وَلَوْ كَانُوا لَا يُبْصِرُونَ ﴿٤٣﴾

४३) र तिनीहरू मध्ये केही यस्ता छन् जसले तपाईतिर हेर्दैछन्, त के तपाईले अन्धाहरूलाई बाटो देखाउनु हुन्छ, यद्यपि केही पनि देख्ने छैनन् ।

إِنَّ اللَّهَ لَا يَظْلِمُ النَّاسَ شَيْئًا وَلَٰكِنَّ النَّاسَ أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٤٤﴾

४४) यो निश्चित कुरा हो कि अल्लाहले त मानिसहरू माथि केही अत्याचार गर्दैन, तर मानिसहरू आफूले नै आफूमाथि अत्याचार गर्दछन् ।

وَيَوْمَ يَحْشُرُهُمْ كَأَن لَّمْ يَلْبَثُوا إِلَّا سَاعَةً مِّنَ النَّهَارِ يَتَعَارَفُونَ بَيْنَهُمْ ۚ قَدْ خَسِرَ الَّذِينَ كَذَّبُوا بِلِقَاءِ اللَّهِ وَمَا كَانُوا مُهْتَدِينَ ﴿٤٥﴾

४५) र जुन दिन अल्लाहले तिनीहरूलाई (आफ्नो समक्ष) एकत्रित गर्नेछ त्यसदिनको स्मरण गराउनुस् कि तिनीहरूलाई यस्तो महसूस हुनेछ जस्तो कि दिनको एक घण्टा भन्दा बढी त्यहाँ थिएनन् (र) आपसमा एक अर्कालाई चिन्न उभिएका छन् । जुन मानिसहरूले अल्लाहको अगाडि उपस्थित हुने कुरो झूठा भने, तिनीहरू घाटामा परिहाले र तिनीहरू सहि बाटो पाउन सकेनन् ।

وَإِمَّا نُرِيَنَّكَ بَعْضَ الَّذِي نَعِدُهُمْ أَوْ نَتَوَفَّيَنَّكَ فَإِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ اللَّهُ شَهِيدٌ عَلَىٰ مَا يَفْعَلُونَ ﴿٤٦﴾

४६) र मैले जसको वाचा गरेको छु त्यस मध्येबाट केही यदि मैले तपाईलाई देखाऊँ अथवा तपाईलाई मृत्यु दिऊँ

भनेपनि मेरो नजिक उनीहरूले आउनु नै पर्नेछ। फेरि अल्लाह उनीहरूको सबै कर्महरूको साक्षी छ।

४७) र प्रत्येक समुदायको लागि एउटा पैगम्बर पठाइयो, जब तिनीहरूको पैगम्बर आउँछ त उनीहरूमा न्यायपूर्ण तरिकाले फैसला गरिदिइनेछ र तिनीहरू माथि कुनै अत्याचार गरिदैन।

وَلِكُلِّ أُمَّةٍ رَّسُولٌ ۖ فَإِذَا جَاءَ رَسُولُهُمْ قُضِيَ بَيْنَهُم بِالْقِسْطِ وَهُمْ لَا يُظْلَمُونَ ﴿٤٧﴾

४८) र यिनीहरूले भन्दछन् कि यदि तिमी साँचो हौ भने यो वाचा कहिले (पूरा) हुनेछ।

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٨﴾

४९) भनिदिनुस् कि मलाई त आफ्नो व्यक्तिगत हानि र लाभ बारे पनि कुनै अधिकार छैन, त्यस बाहेक जति अल्लाहले इच्छा गर्दछ। प्रत्येक समुदायको लागि (मृत्युको) समय निर्धारित छ। जब निर्धारित समय आइपुग्दछ त एकछिन पनि ढिलो गर्न सक्दैनन् र न त छिटो गर्न सक्तछन्।

قُل لَّا أَمْلِكُ لِنَفْسِي ضَرًّا وَلَا نَفْعًا إِلَّا مَا شَاءَ اللَّهُ ۗ لِكُلِّ أُمَّةٍ أَجَلٌ ۚ إِذَا جَاءَ أَجَلُهُمْ فَلَا يَسْتَأْخِرُونَ سَاعَةً ۖ وَلَا يَسْتَقْدِمُونَ ﴿٤٩﴾

५०) भनिदिनुस् कि हेर ! उसको दण्ड यदि तिमी माथि एक्कासी राती वा दिनमा आइपुग्नेछ, त फेरि सजायमा यस्तो के लाभ छ जुन अपराधीहरूले छिटै माँगिरहेकाछन्।

قُلْ أَرَأَيْتُمْ إِنْ أَتَاكُمْ عَذَابُهُ بَيَاتًا أَوْ نَهَارًا مَّاذَا يَسْتَعْجِلُ مِنْهُ الْمُجْرِمُونَ ﴿٥٠﴾

५१) के त्यो आइसकेपछि मात्र विश्वास गर्नेछौ। के अब विश्वास गरिहाल्यौ

أَثُمَّ إِذَا مَا وَقَعَ آمَنتُم بِهِ ۚ آلْآنَ وَقَدْ كُنتُم بِهِ تَسْتَعْجِلُونَ ﴿٥١﴾

जबकि यसैको निम्ति त तिमीले हतार गर्ने गर्दथ्यौ ।

ثُمَّ قِيلَ لِلَّذِينَ ظَلَمُوا ذُوقُوا عَذَابَ الْخُلْدِ هَلْ تُجْزَوْنَ إِلَّا بِمَا كُنتُمْ تَكْسِبُونَ ﴿٥٢﴾

५२) अनि अत्याचारीहरूसित भनिनेछः कि स्थायी दण्डको स्वाद चाख । तिमी त तिमीले गरेकै कर्महरूको प्रतिफल पाएका हौ ।

وَيَسْتَنبِئُونَكَ أَحَقٌّ هُوَ قُلْ إِي وَرَبِّي إِنَّهُ لَحَقٌّ وَمَا أَنتُم بِمُعْجِزِينَ ﴿٥٣﴾

५३) र तिनीहरूले तपाईसँग सोध्छन्: कि के (यो) सजाय साँचो हो ? भनिदिनुस् हो "अल्लाहको शपथ छ, त्यो वास्तवमा साँचो हो । र तिमी अल्लाहलाई प्रास्त पार्न सक्ने छैनौ ।

وَلَوْ أَنَّ لِكُلِّ نَفْسٍ ظَلَمَتْ مَا فِي الْأَرْضِ لَافْتَدَتْ بِهِ وَأَسَرُّوا النَّدَامَةَ لَمَّا رَأَوُا الْعَذَابَ وَقُضِيَ بَيْنَهُم بِالْقِسْطِ وَهُمْ لَا يُظْلَمُونَ ﴿٥٤﴾

५४) र यदि हरेक उल्लंघनकारीसित धर्तीका सम्पूर्ण कुराहरू छन् भने ती सबै कुरा आफू बच्नको लागि दिन तयार हुनेछ । र जब तिनीहरूले सजाय देख्दछन् त लज्जालाई लुकाउनेछन्, र तिनीहरूमा न्यायपूर्ण रूपले फैसला गरिनेछ, र कुनै प्रकारको अत्याचार तिनीहरूमाथि गरिनेछैन ।

أَلَا إِنَّ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ أَلَا إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٥٥﴾

५५) सुनिराखः कि जे जति आकाशहरू र पृथ्वीमा छन्, सबै अल्लाह कै साम्राज्य हुन् । र यो पनि सुनिराख कि अल्लाहको वचन साँचो छ, तर तिनीहरूमध्ये धेरैजसोले बुझ्दैनन् ।

هُوَ يُحْيِي وَيُمِيتُ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٥٦﴾

५६) उसैले जीवन दिन्छ, र उसैले प्राण निकाल्छ, र तिमीहरू सबै उसैतिर लगिनेछौ ।

يَٰٓأَيُّهَا ٱلنَّاسُ قَدْ جَآءَتْكُم مَّوْعِظَةٌ مِّن رَّبِّكُمْ وَشِفَآءٌ لِّمَا فِى ٱلصُّدُورِ وَهُدًى وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ ﴿٥٧﴾

५७) हे मानिसहरू ! तिम्रो समीपमा पालनकर्ताको तर्फबाट उपदेश र हृदयका रोगहरूका निम्ति उपचार र मोमिनहरूको लागि मार्गदर्शन र वरदान आइपुगेको छ ।

قُلْ بِفَضْلِ ٱللَّهِ وَبِرَحْمَتِهِۦ فَبِذَٰلِكَ فَلْيَفْرَحُوا۟ هُوَ خَيْرٌ مِّمَّا يَجْمَعُونَ ﴿٥٨﴾

५८) भनिदिनुस्: कि यो किताब अल्लाहको कृपा र उसैको दयालुताबाट प्रदान गरिएको छ तसर्थ यसबाट मानिसहरू प्रसन्न हुनुपर्छ । यो त्यसबाट धेरै राम्रो छ जुन तिनीहरूले सम्पत्तिको रूपमा थुपार्छन् ।

قُلْ أَرَءَيْتُم مَّآ أَنزَلَ ٱللَّهُ لَكُم مِّن رِّزْقٍ فَجَعَلْتُم مِّنْهُ حَرَامًا وَحَلَٰلًا قُلْ ءَآللَّهُ أَذِنَ لَكُمْ أَمْ عَلَى ٱللَّهِ تَفْتَرُونَ ﴿٥٩﴾

५९) तपाई भन्नुस् कि हेर, अल्लाहले तिम्रो निम्ति जुन जीविका प्रदान गरेको थियो, तिमीले ती मध्ये केहीलाई त्याज्य ठह्रायौ र केहीलाई ग्रहणीय, तिनीहरूसित सोध्नुस्, के अल्लाहले तिमीलाई यसको आदेश दिएको थियो वा तिमी अल्लाह माथि झूठो दोष लगाइराखेका छौ ?

وَمَا ظَنُّ ٱلَّذِينَ يَفْتَرُونَ عَلَى ٱللَّهِ ٱلْكَذِبَ يَوْمَ ٱلْقِيَٰمَةِ ۗ إِنَّ ٱللَّهَ لَذُو فَضْلٍ عَلَى ٱلنَّاسِ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَشْكُرُونَ ﴿٦٠﴾

६०) र जुन मानिसहरूले अल्लाह माथि झूठा आरोप लगाउँछन्, तिनीहरूले कियामतको दिनको बारेमा के विचार गर्दछन् ? निःसन्देह अल्लाह मानिसहरूको निम्ति दयावान छ, तर धेरैजसो आभार प्रकट गर्दैनन् ।

وَمَا تَكُونُ فِى شَأْنٍ وَمَا تَتْلُوا۟ مِنْهُ مِن قُرْءَانٍ وَلَا تَعْمَلُونَ مِنْ عَمَلٍ إِلَّا كُنَّا عَلَيْكُمْ شُهُودًا إِذْ تُفِيضُونَ فِيهِ ۚ وَمَا يَعْزُبُ عَن رَّبِّكَ مِن مِّثْقَالِ ذَرَّةٍ فِى ٱلْأَرْضِ وَلَا فِى ٱلسَّمَآءِ وَلَآ أَصْغَرَ

६१) र तिमी जुन सुकै अवस्थामा हुन्छौ वा कुरआनबाट केही पाठ गर्छौ वा तिमीहरूले कुनै अन्य काम गर्दा जब त्यसमा संलग्न हुन्छौ, हामी

مِنْ ذٰلِكَ وَلَآ اَكْبَرَ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ﴿٦١﴾

त्यसको जानकारी राख्दछौ र तिम्रो पालनकर्ताबाट कुनै कुरा लेस मात्र पनि लुकेको छैन । न जमीनमा, न आकाशमा र न कुनै कुरा त्यस भन्दा सानो छ वा ठूलो तर स्पष्ट किताबमा लेखिएको छ ।

اَلَآ اِنَّ اَوْلِيَآءَ اللّٰهِ لَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُوْنَ ﴿٦٢﴾

६२) सुनिराखः कि अल्लाहका मित्रहरूलाई न कुनै भय-त्रास हुनेछ र नत तिनीहरू दुःखी हुनेछन् ।

اَلَّذِيْنَ اٰمَنُوْا وَكَانُوْا يَتَّقُوْنَ ﴿٦٣﴾

६३) यी तिनीहरू हुन् जसले ईमान ल्याए र आत्मसंयमी रहे ।

لَهُمُ الْبُشْرٰى فِي الْحَيٰوةِ الدُّنْيَا وَفِي الْاٰخِرَةِ ؕ لَا تَبْدِيْلَ لِكَلِمٰتِ اللّٰهِ ؕ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿٦٤﴾

६४) तिनीहरूको निम्ति सांसारिक जीवनमा पनि शुभ सन्देश छ, र परलोकमा पनि । अल्लाहको कुरामा परिवर्तन हुँदैन । यहि त ठूलो सफलता हो ।

وَلَا يَحْزُنْكَ قَوْلُهُمْ ۘ اِنَّ الْعِزَّةَ لِلّٰهِ جَمِيْعًا ؕ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٦٥﴾

६५) (र हे मोहम्मद (स.अ.) ! ती मानिसहरूका दुर्वचन तिमीलाई दुःखी न पारोस् किनभने सम्पूर्ण मर्यादा अल्लाह कै लागि हो । ऊ सबैकुरा सुन्दछ र जान्दछ ।

اَلَآ اِنَّ لِلّٰهِ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ فِي الْاَرْضِ ؕ وَمَا يَتَّبِعُ الَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ شُرَكَآءَ ؕ اِنْ يَّتَّبِعُوْنَ اِلَّا الظَّنَّ وَاِنْ هُمْ اِلَّا يَخْرُصُوْنَ ﴿٦٦﴾

६६) याद राख कि जे जति आकाशहरूमा छन् र जति पृथ्वीमा छन् सबै अल्लाह कै हुन् । र जसले अल्लाह बाहेक आफूले चाहेको साझेदारहरूलाई पुकार्दछन्, उनीहरू कसको पछि लागेका छन् ? ती मात्र अप्रमाणित कुराहरूको अनुशरण गर्दैछन् र अनुमान मात्र लगाउँदै छन् ।

हُوَ الَّذِيْ جَعَلَ لَكُمُ الَّيْلَ لِتَسْكُنُوْا فِيْهِ وَالنَّهَارَ مُبْصِرًا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٦٧﴾

६७) ऊ नै हो जसले तिम्रो निम्ति राति बनायो ताकि यसमा आराम गर र उज्यालो दिन बनायो । निस्सन्देह त्यसमा ध्यानबाट सुन्नेहरूको लागी निशानीहरू छन् ।

قَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا سُبْحٰنَهٗ ؕ هُوَ الْغَنِيُّ ؕ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ؕ اِنْ عِنْدَكُمْ مِّنْ سُلْطٰنٍۭ بِهٰذَا ؕ اَتَقُوْلُوْنَ عَلَى اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٦٨﴾

६८) तिनीहरू भन्दछन्: कि अल्लाह आफनोलागि एउटा पुत्र ग्रहण गरेको छ । अल्लाहलाई कसैको आवश्यकता छैन, ऊ स्वयं परिपूर्ण र महान छ । जे जति आकाशहरूमा र जे जति जमिनमा छन् ती सबै उसैका हुन् ! तिमीसित यस झूठो कुराको कुनै प्रमाण छैन । तिमीले अल्लाहको बारेमा यस्तो कुरा भन्दछौ जुन जान्दैनौ ?

قُلْ اِنَّ الَّذِيْنَ يَفْتَرُوْنَ عَلَى اللّٰهِ الْكَذِبَ لَا يُفْلِحُوْنَ ﴿٦٩﴾ؕ

६९) भनिदिनुस्: कि जुन मानिसहरूले अल्लाह माथि झूठा आरोप लगाउँछन्, तिनीहरू सफलता पाउने छैनन् ।

مَتَاعٌ فِي الدُّنْيَا ثُمَّ اِلَيْنَا مَرْجِعُهُمْ ثُمَّ نُذِيْقُهُمُ الْعَذَابَ الشَّدِيْدَ بِمَا كَانُوْا يَكْفُرُوْنَ ﴿٧٠﴾ۧ

७०) तिनीहरूलाई केही फाइदाहरू छन् संसारमै अन्ततः हामी तिरै फर्केर आउनु हुनेछ, त्यति बेला हामीले तिनीहरूलाई कुफ्र गरेको बदलामा कडा सजायको स्वाद चखाउने छौं ।

وَاتْلُ عَلَيْهِمْ نَبَاَ نُوْحٍ ۘ اِذْ قَالَ لِقَوْمِهٖ يٰقَوْمِ اِنْ كَانَ كَبُرَ عَلَيْكُمْ مَّقَامِيْ وَتَذْكِيْرِيْ بِاٰيٰتِ اللّٰهِ فَعَلَى اللّٰهِ تَوَكَّلْتُ فَاَجْمِعُوْا اَمْرَكُمْ وَشُرَكَآءَكُمْ ثُمَّ لَا يَكُنْ اَمْرُكُمْ عَلَيْكُمْ غُمَّةً ثُمَّ اقْضُوْا اِلَيَّ وَلَا تُنْظِرُوْنِ ﴿٧١﴾

७१) र तपाईले उनीलाई नूहको कथा पढेर सुनाइदिनुस्, जब उनले आफ्नो समुदायसित भने हे मेरा कौमका मानिसहरू ! यदि तिमीलाई तिमीहरूको माझमा मेरो बसाई र अल्लाहका आयतहरूबारे स्मरण

गराउन नराम्रो लाग्दछ भने, म त अल्लाहमाथि नै भरोसा राख्दछु, तिमीले आफ्ना साझेदारहरूसँग मिलेर आफ्नो उपाय गरिहाल । तिम्रो उपाय तिम्रो कष्टको कारण नबनोस्, अनि त्यो काम मेरो सम्बन्धमा गरिहाल र मलाई समय नदेऊ ।

७२) फेरि पनि यदि तिमीले विमुख नै हुन्छौ भने मैले तिमीबाट कुनै परितोषिक त माँगेको छैन । मेरो मजदूरी त मात्र अल्लाहसंग छ, र मलाई आदेश दिइएको छ कि म मुसलमानहरू मध्येबाट रहूँ ।

فَإِنْ تَوَلَّيْتُمْ فَمَا سَأَلْتُكُمْ مِّنْ أَجْرٍ ۖ إِنْ أَجْرِيَ إِلَّا عَلَى اللَّهِ ۖ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ الْمُسْلِمِينَ ﴿٧٢﴾

७३) तर उनीहरूले उनलाई झूठ मानी राखे, त हामीले उनलाई र जो मानिसहरू उनका साथ डुंगामा सवार थिए, सबैलाई बचाइहाल्यौं, र उनलाई (धर्तीको) उत्तराधिकारी बनायौं, र उनीहरूलाई डुबाई दियौं जसले हाम्रा निशानीलाई झूठो मानेका थिए, यो हेर्नु पर्ने छ कि जुन मानिसहरूलाई सावधान गरिएको थियो, तिनीहरूको कस्तो परिणाम भयो ।

فَكَذَّبُوهُ فَنَجَّيْنَاهُ وَمَنْ مَّعَهُ فِي الْفُلْكِ وَجَعَلْنَاهُمْ خَلَائِفَ وَأَغْرَقْنَا الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا ۖ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُنْذَرِينَ ﴿٧٣﴾

७४) अनि नूह(अलै.) पछि हामीले अरु पैगम्बरहरूलाई तिनीहरूको कौमतर्फ पठायौं, त उनीहरूले तिनीहरू छेउ स्पष्ट निशानीहरू लिएर आए तर

ثُمَّ بَعَثْنَا مِنْ بَعْدِهِ رُسُلًا إِلَىٰ قَوْمِهِمْ فَجَاءُوهُمْ بِالْبَيِّنَاتِ فَمَا كَانُوا لِيُؤْمِنُوا بِمَا كَذَّبُوا بِهِ مِنْ قَبْلُ ۚ كَذَٰلِكَ نَطْبَعُ عَلَىٰ قُلُوبِ الْمُعْتَدِينَ ﴿٧٤﴾

तिनीहरूले अघि अस्वीकार गरिसकेको कुरामा विश्वास गर्ने थिएनन् । यसै प्रकार हामीले उल्लंघनकारीहरूको हृदयको द्वार बन्द गरिदिन्छौं ।

ثُمَّ بَعَثْنَا مِنۢ بَعْدِهِم مُّوسَىٰ وَهَٰرُونَ إِلَىٰ فِرْعَوْنَ وَمَلَإِيْهِۦ بِـَٔايَٰتِنَا فَٱسْتَكْبَرُوا۟ وَكَانُوا۟ قَوْمًا مُّجْرِمِينَ ﴿٧٥﴾

७५) अनि तिनीहरूपछि हामीले मूसा (अलै.) र हारून (अलै.)लाई आफ्ना निशानीहरू दिएर फिरऔन र त्यसका नायकहरू छेउ पठायौं तब तिनीहरूले घमण्ड गरे, र तिनीहरू अपराधी सम्प्रदायका थिए ।

فَلَمَّا جَآءَهُمُ ٱلْحَقُّ مِنْ عِندِنَا قَالُوٓا۟ إِنَّ هَٰذَا لَسِحْرٌ مُّبِينٌ ﴿٧٦﴾

७६) तसर्थ जब उनीहरू छेउ हाम्रो तर्फबाट सत्य आयो, तब भन्न थाले कि यो निःसन्देह खुल्लम खुल्ला जादू हो ।

قَالَ مُوسَىٰٓ أَتَقُولُونَ لِلْحَقِّ لَمَّا جَآءَكُمْ ۖ أَسِحْرٌ هَٰذَا وَلَا يُفْلِحُ ٱلسَّٰحِرُونَ ﴿٧٧﴾

७७) मूसा (अलै.)ले भनेः के तिमीले सत्यको बारेमा जब त्यो तिमी छेउ आयो, यो भन्छौ कि यो जादू हो ? तर जादूगर सफल हुने छैनन् ।

قَالُوٓا۟ أَجِئْتَنَا لِتَلْفِتَنَا عَمَّا وَجَدْنَا عَلَيْهِ ءَابَآءَنَا وَتَكُونَ لَكُمَا ٱلْكِبْرِيَآءُ فِى ٱلْأَرْضِ وَمَا نَحْنُ لَكُمَا بِمُؤْمِنِينَ ﴿٧٨﴾

७८) तिनीहरूले भने कि के तिमी हाम्रो छेउ यसकारण आएका छौ कि जुन बाटोमा हामी आफ्ना पूर्वजहरूलाई हिंडेका पाएका छौं त्यसबाट हामीलाई विचलित पारीदेऊ, र यस देशमा तिमी दुवैको प्रशंसा स्थापित भइहालोस् । र हामी तिमी दुवैलाई कहिल्यै मान्नेवाला छैनौं ।

وَقَالَ فِرْعَوْنُ ٱئْتُونِى بِكُلِّ سَٰحِرٍ عَلِيمٍ ﴿٧٩﴾

७९) र फिरऔनले आदेश दियोः कि सबै अनुभवी जादूगरहरूलाई मेरो सामु ल्याऊ ।

فَلَمَّا جَآءَ السَّحَرَةُ قَالَ لَهُم مُّوسَىٰٓ أَلْقُوا مَآ أَنتُم مُّلْقُونَ ﴿٨٠﴾

८०) अनि जब जादूगरहरू आए, तब मूसा (अलै.)ले तिनीहरूसित भने कि तिमीहरूले जे जादू गर्न चाहन्छौ गर ।

فَلَمَّآ أَلْقَوْا قَالَ مُوسَىٰ مَا جِئْتُم بِهِ السِّحْرُ ۖ إِنَّ اللَّهَ سَيُبْطِلُهُۥٓ ۖ إِنَّ اللَّهَ لَا يُصْلِحُ عَمَلَ الْمُفْسِدِينَ ﴿٨١﴾

८१) जब तिनीहरूले आफ्ना जादूहरू देखाए तब मूसा(अलै.)ले भने: कि जुन कुरो तिमीले बनाएर ल्याएका छौ, जादू हो । अल्लाहले यसलाई (एकैछिनमा) प्रभावहीन पारिदिन्छ । अल्लाहले यस्ता उपद्रवीहरूको कामलाई सफल पार्दैन ।

وَيُحِقُّ اللَّهُ الْحَقَّ بِكَلِمَٰتِهِۦ وَلَوْ كَرِهَ الْمُجْرِمُونَ ﴿٨٢﴾

८२) र अल्लाह आफ्नो आदेशले सत्यलाई नै स्थापित गर्दछ, चाहे अपराधिहरूले त्यसलाई जति नराम्रो माने पनि ।

فَمَآ ءَامَنَ لِمُوسَىٰٓ إِلَّا ذُرِّيَّةٌ مِّن قَوْمِهِۦ عَلَىٰ خَوْفٍ مِّن فِرْعَوْنَ وَمَلَإِي۟هِمْ أَن يَفْتِنَهُمْ ۚ وَإِنَّ فِرْعَوْنَ لَعَالٍ فِى الْأَرْضِ ۖ وَإِنَّهُۥ لَمِنَ الْمُسْرِفِينَ ﴿٨٣﴾

८३) तर मूसा (अलै.)लाई धेरैले विश्वास गरेनन् तर उनको कौमका केही मानिसहरू मात्र (त्यो पनि) फिरऔन र त्यसका दरबारीयाहरूसँग डराउँदैं कि त्यसले तिनीहरूलाई दुःख नदेओस् । र फिरऔन त्यस देशमा तागत राख्दथ्यो र निसन्देह ऊ सिमाउल्लन्घनगर्ने मध्यकाथियो ।

وَقَالَ مُوسَىٰ يَٰقَوْمِ إِن كُنتُمْ ءَامَنتُم بِاللَّهِ فَعَلَيْهِ تَوَكَّلُوٓا إِن كُنتُم مُّسْلِمِينَ ﴿٨٤﴾

८४) र मूसा (अलै.)ले भने- हे मेरा क़ौमका मानिसहरू ! यदि तिमीले अल्लाहमाथि ईमान राख्दछौ भने उसैमाथि भरोसा राख यदि तिमी आज्ञाकारी छौ ।

فَقَالُوا عَلَى اللَّهِ تَوَكَّلْنَا رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِّلْقَوْمِ الظَّٰلِمِينَ ﴿٨٥﴾

८५) त तिनीहरूले भने: कि हामी अल्लाह माथि भरोसा राख्दछौ, हे हाम्रा

पालनकर्ता ! हामीलाई अत्याचारीको परीक्षाको साधन नबनाउ ।

وَنَجِّنَا بِرَحْمَتِكَ مِنَ الْقَوْمِ الْكٰفِرِيْنَ ﴿٨٦﴾

८६) र आफ्नो कृपाले काफिरहरूको सम्प्रदायबाट मुक्त गर ।

وَاَوْحَيْنَآ اِلٰى مُوْسٰى وَاَخِيْهِ اَنْ تَبَوَّاٰ لِقَوْمِكُمَا بِمِصْرَ بُيُوْتًا وَّاجْعَلُوْا بُيُوْتَكُمْ قِبْلَةً وَّاَقِيْمُوا الصَّلٰوةَ ۗ وَبَشِّرِ الْمُؤْمِنِيْنَ ﴿٨٧﴾

८७) र हामीले मूसा (अलै.) र उनको भाइलाई वह्य पठायौं कि तिमी दुवैले आफ्नो मानिसहरूको निम्ति मिश्रमा केही घर बनाऊ, र आफ्ना घरहरूलाई क़िब्ला (मास्जिद) बनाऊ र नमाज़ पढ । र मोमिनहरूलाई शुभ सन्देश सुनाई देऊ ।

وَقَالَ مُوْسٰى رَبَّنَآ اِنَّكَ اٰتَيْتَ فِرْعَوْنَ وَمَلَاَهٗ زِيْنَةً وَّاَمْوَالًا فِى الْحَيٰوةِ الدُّنْيَا ۙ رَبَّنَا لِيُضِلُّوْا عَنْ سَبِيْلِكَ ۚ رَبَّنَا اطْمِسْ عَلٰٓى اَمْوَالِهِمْ وَاشْدُدْ عَلٰى قُلُوْبِهِمْ فَلَا يُؤْمِنُوْا حَتّٰى يَرَوُا الْعَذَابَ الْاَلِيْمَ ﴿٨٨﴾

८८) र मूसा (अलै.)ले भनेः हे पालनकर्ता ! तिमीले फिरऔन र त्यसका नायकहरूलाई सांसारिक जीवनमा (प्रशस्त) शोभनीय सामग्री, धन सम्पत्ति दिएका छौ, हे पालनकर्ता ! यस्ता यसलागि कि तिम्रो सही बाटोबाट विचलित गरुन्, हे पालनकर्ता ! यिनीहरूका धन सम्पत्तिलाई खतम पारी देऊ, र यिनीहरूको हृदयलाई कठोर बनाइदेऊ, जसबाट यिनीहरूले ईमान ल्याउन नपाऊन् यहाँसम्म कि कष्टदायक सजाय देखुन् ।

قَالَ قَدْ اُجِيْبَتْ دَّعْوَتُكُمَا فَاسْتَقِيْمَا وَلَا تَتَّبِعٰٓنِّ سَبِيْلَ الَّذِيْنَ لَا يَعْلَمُوْنَ ﴿٨٩﴾

८९) अल्लाहले आदेश गर्नुभयोः कि तिमीहरूको प्रार्थना स्वीकार गरियो तसर्थ तिमीहरू दृढ रह र बुद्धिहीनहरूको बाटोमा नलाग ।

وَجٰوَزْنَا بِبَنِيْٓ اِسْرَآءِيْلَ الْبَحْرَ فَاَتْبَعَهُمْ فِرْعَوْنُ

९०) र हामीले बनी इस्राईलको सन्ततिलाई

وَجُنُودُهُ بَغْيًا وَعَدْوًا ۖ حَتَّىٰ إِذَا أَدْرَكَهُ الْغَرَقُ قَالَ آمَنتُ أَنَّهُ لَا إِلَٰهَ إِلَّا الَّذِي آمَنَتْ بِهِ بَنُو إِسْرَائِيلَ وَأَنَا مِنَ الْمُسْلِمِينَ ﴿٩٠﴾

समुन्द्रपार गराइदियौं त फिरऔन र त्यसका सेनाले उनको पछि अत्याचार र अन्यायको इच्छाले हिंडे । यससम्म कि जब ऊलाई डूबाउने संकट आइलाग्यो तब भन्न थाल्यो: "मैले ईमान ल्याएँ जसमाथी बनी इस्राईलले ईमान ल्याएका छन् ऊ बाहेक कोही सत्य पूज्य छैन र म मुसलमानहरू मध्येबाट हूँ ।"

آلْآنَ وَقَدْ عَصَيْتَ قَبْلُ وَكُنتَ مِنَ الْمُفْسِدِينَ ﴿٩١﴾

९१) (उत्तर आयो) अहिले विश्वास गर्दछौ हुनत तिमी पहिला आदेशको उल्लघंन गर्दथ्यौ र उपद्रवी थियौ ।

فَالْيَوْمَ نُنَجِّيكَ بِبَدَنِكَ لِتَكُونَ لِمَنْ خَلْفَكَ آيَةً ۚ وَإِنَّ كَثِيرًا مِّنَ النَّاسِ عَنْ آيَاتِنَا لَغَافِلُونَ ﴿٩٢﴾

९२) आज हामीले तिम्रो लाशको मात्र उद्धार गर्ने छौं, ताकि तिमी पछि आउनेको निम्ति पाठ होऊ । र वास्तविकता यो छ कि धेरैजसो मानिसहरू हाम्रा निशानीहरूबाट अनभिज्ञ छन् ।

وَلَقَدْ بَوَّأْنَا بَنِي إِسْرَائِيلَ مُبَوَّأَ صِدْقٍ وَرَزَقْنَاهُم مِّنَ الطَّيِّبَاتِ فَمَا اخْتَلَفُوا حَتَّىٰ جَاءَهُمُ الْعِلْمُ ۚ إِنَّ رَبَّكَ يَقْضِي بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٩٣﴾

९३) र हामीले बनी इस्राईललाई बासको निम्ति राम्रो ठाउँको व्यवस्था गर्‍यौं, र खानाको निम्ति पवित्र कुराहरू प्रदान गर्‍यौं, तर तिनीहरूले ज्ञान आगमनको बावजूद विरोध गरे । निःसन्देह जुन कुरामा तिनीहरूले विवाद गरिराखेछन्, तिम्रो पालनहारले कियामतको दिन तिनीहरूमा ती कुराहरूको न्याय गर्नेछ ।

فَإِن كُنتَ فِي شَكٍّ مِّمَّا أَنزَلْنَا إِلَيْكَ فَاسْأَلِ الَّذِينَ يَقْرَءُونَ الْكِتَابَ مِن قَبْلِكَ ۚ لَقَدْ

९४) फेरि यदि तिमीलाई यस (किताबको) बारेमा, जुन हामीले तिमीलाई

جَآءَكَ الْحَقُّ مِنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ مِنَ الْمُمْتَرِيْنَ ﴿٩٤﴾

प्रदान गरेका छौं, केही सन्देह छ भने, जुन मानिसहरूले तिमी भन्दा पहिला (प्रदान गरिएका) किताबहरू पढ्छन्, तिनीहरू सित सोधिहाल, तिम्रा पालनहारको तर्फबाट तिमीलाई सत्य (किताब) आइसकेको छ, तसर्थ तिमी कहिले पनि शंका गर्नेहरू मध्यबाट नहुनु ।

وَلَا تَكُوْنَنَّ مِنَ الَّذِيْنَ كَذَّبُوْا بِاٰيٰتِ اللّٰهِ فَتَكُوْنَ مِنَ الْخٰسِرِيْنَ ﴿٩٥﴾

९५) र नत ती मानिसहरू मध्ये हुनु जसले अल्लाहका आयतहरूलाई झूठा भन्दछन् अन्यथा हानिमा पर्नेमध्ये हुनेछौ ।

اِنَّ الَّذِيْنَ حَقَّتْ عَلَيْهِمْ كَلِمَتُ رَبِّكَ لَا يُؤْمِنُوْنَ ﴿٩٦﴾

९६) निश्चयनै जुन मानिसहरूको बारेमा अल्लाहको आदेश निश्चित भइसकेछ, तिनीहरूले ईमान ल्याउने छैनन् ।

وَلَوْ جَآءَتْهُمْ كُلُّ اٰيَةٍ حَتّٰى يَرَوُا الْعَذَابَ الْاَلِيْمَ ﴿٩٧﴾

९७) चाहे तिनीहरूको समीपमा प्रत्येक प्रकारको निशानी आइहालोस्, यहाँसम्म कि तिनीहरू कष्टदायक यातना देखुन ।

فَلَوْلَا كَانَتْ قَرْيَةٌ اٰمَنَتْ فَنَفَعَهَآ اِيْمَانُهَآ اِلَّا قَوْمَ يُوْنُسَ لَمَّآ اٰمَنُوْا كَشَفْنَا عَنْهُمْ عَذَابَ الْخِزْيِ فِي الْحَيٰوةِ الدُّنْيَا وَمَتَّعْنٰهُمْ اِلٰى حِيْنٍ ﴿٩٨﴾

९८) अनि यूनुसको समुदाय बाहेक कुनै बस्तीले ईमान ल्याएन, जबकि ईमान ल्याएबाट तिनलाई फाइदा हुन्थ्यो, हो ("यूनुसको" कौमले) जब ईमान ल्यायो त हामीले दुनियाँको जिन्दगीमा तिनीहरूबाट तिरस्कारपूर्ण सजाय हटाइहाल्यौं, र एक अवधिसम्म सांसारिक लाभहरू उठाउने तिनीहरूलाई अवसर प्रदान गर्‍यौं ।

وَلَوْ شَاءَ رَبُّكَ لَآمَنَ مَن فِي الْأَرْضِ كُلُّهُمْ جَمِيعًا ۚ أَفَأَنتَ تُكْرِهُ النَّاسَ حَتَّىٰ يَكُونُوا مُؤْمِنِينَ ﴿٩٩﴾

९९) र यदि तपाईको पालनकर्ताले चाहेको भए, जति मानिसहरू पृथ्वीमा छन्, सबैले ईमान ल्याई सक्दथे । अतः के तपाई मानिसहरूमाथि जबरजस्ती गर्नु हुन्छ, तिनीहरू मोमिन नभए सम्म ।

وَمَا كَانَ لِنَفْسٍ أَن تُؤْمِنَ إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَيَجْعَلُ الرِّجْسَ عَلَى الَّذِينَ لَا يَعْقِلُونَ ﴿١٠٠﴾

१००) हुनत कुनै व्यक्तिलाई सामर्थ्य छैन कि अल्लाहको आदेश बिना ईमान लाउन सकोस्, र बुद्धिहीन मानिसहरूलाई अल्लाहले (शिर्कको) फोहरमा हाली दिन्छ ।

قُلِ انظُرُوا مَاذَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَمَا تُغْنِي الْآيَاتُ وَالنُّذُرُ عَن قَوْمٍ لَّا يُؤْمِنُونَ ﴿١٠١﴾

१०१) तपाई भनिदिनुस् कि आकाशहरू र पृथ्वीमा भएका सबै कुराहरू राम्रोसंग हेर । तर जुन मानिसहरू ईमान नलाएका छन् निशानीहरू र चेतावनीबाट तिनीहरू लाभांवित हुने छैनन् ।

فَهَلْ يَنتَظِرُونَ إِلَّا مِثْلَ أَيَّامِ الَّذِينَ خَلَوْا مِن قَبْلِهِمْ ۚ قُلْ فَانتَظِرُوا إِنِّي مَعَكُم مِّنَ الْمُنتَظِرِينَ ﴿١٠٢﴾

१०२) तसर्थ जुन प्रकारका घटनाहरू तिनीहरूभन्दा पहिलाका मानिसहरू माथि बितिसकेका छन् त्यस्तै किसिमका घटनाहरूको प्रतिक्षामा यिनीहरू छन् । भनिदिनुस्: कि ठीक छ तिमी पनि प्रतिक्षा गर, म पनि तिम्रो साथमा प्रतिक्षा गर्दछु ।

ثُمَّ نُنَجِّي رُسُلَنَا وَالَّذِينَ آمَنُوا ۚ كَذَٰلِكَ حَقًّا عَلَيْنَا نُنجِ الْمُؤْمِنِينَ ﴿١٠٣﴾

१०३) र हामीले आफ्ना पैगम्बरहरूलाई र ईमान ल्याएकाहरूलाई छुटकारा दिदै आइराखेका छौं । हाम्रो उत्तरदायित्व छ कि मुसलमानहरूलाई छुटकारा प्रदान गर्दै गरौं ।

قُلْ يَٰٓأَيُّهَا ٱلنَّاسُ إِن كُنتُمْ فِى شَكٍّ مِّن دِينِى فَلَآ أَعْبُدُ ٱلَّذِينَ تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ وَلَٰكِنْ أَعْبُدُ ٱللَّهَ ٱلَّذِى يَتَوَفَّىٰكُمْ ۖ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ ٱلْمُؤْمِنِينَ ﴿١٠٤﴾

१०४) तपाई भनिदिनुस्: कि हे मानिसहरू ! यदि तिमीलाई मेरो धर्ममा कुनै प्रकारको शंका छ भने (सुनिराख कि) अल्लाह बाहेक जसको तिमीले पूजा गर्दछौ, म त्यसको पूजा गर्दिन, बरु म उस अल्लाहको पूजा गर्दछु जसले तिम्रो प्राण निकाल्नेछ, र मलाई यो आदेश भएको छ कि ईमान भएका मध्ये रहूँ ।

وَأَنْ أَقِمْ وَجْهَكَ لِلدِّينِ حَنِيفًا وَلَا تَكُونَنَّ مِنَ ٱلْمُشْرِكِينَ ﴿١٠٥﴾

१०५) र यो कि आफ्नो मुख सँधै निष्ठापूर्वक इस्लाम धर्मतिर गरी राख्नु र मुश्रिकहरू मध्येको कहिले नहुनु ।

وَلَا تَدْعُ مِن دُونِ ٱللَّهِ مَا لَا يَنفَعُكَ وَلَا يَضُرُّكَ ۖ فَإِن فَعَلْتَ فَإِنَّكَ إِذًا مِّنَ ٱلظَّٰلِمِينَ ﴿١٠٦﴾

१०६) र अल्लाहलाई छाडि यस्तो कुनै कुराको उपासना नगर्नु जसले कि नत तिम्रो केही भलो गर्न सकोस् नत केही बिगार्न सकोस् । यदि त्यस्तो गर्छौ भने अत्याचारीहरू मध्येको हुने छौ ।

وَإِن يَمْسَسْكَ ٱللَّهُ بِضُرٍّ فَلَا كَاشِفَ لَهُۥٓ إِلَّا هُوَ ۖ وَإِن يُرِدْكَ بِخَيْرٍ فَلَا رَآدَّ لِفَضْلِهِۦ ۚ يُصِيبُ بِهِۦ مَن يَشَآءُ مِنْ عِبَادِهِۦ ۚ وَهُوَ ٱلْغَفُورُ ٱلرَّحِيمُ ﴿١٠٧﴾

१०७) र यदि अल्लाहले तिमीलाई कुनै कष्ट पुऱ्याउँछ भने उस बाहेक त्यसलाई कसैले हटाउन सक्दैन, र यदि उसले तिम्रो भलो गर्न चाहन्छ भने उसको कृपालाई कसैले रोक्न सक्दैन, उसले आफ्ना भक्तहरूमध्ये जसलाई चाहन्छ फाइदा पुऱ्याउँछ र ऊ बडो क्षमतादाता अत्यन्त दयालु छ ।

قُلْ يَٰٓأَيُّهَا ٱلنَّاسُ قَدْ جَآءَكُمُ ٱلْحَقُّ مِن رَّبِّكُمْ ۖ فَمَنِ ٱهْتَدَىٰ فَإِنَّمَا يَهْتَدِى لِنَفْسِهِۦ ۖ وَمَن ضَلَّ فَإِنَّمَا يَضِلُّ عَلَيْهَا ۖ وَمَآ أَنَا۠ عَلَيْكُم بِوَكِيلٍ ﴿١٠٨﴾

१०८) तपाई भनिदिनुस् कि हे मानिसहरू तिम्रो पालनकर्ताबाट तिम्रो छेउमा सत्य आइसकेको छ, तसर्थ जो

मार्गदर्शन प्राप्त गर्न चाहन्छ, उसले पथ प्रदर्शनबाट आफ्नै निम्ति भलो गर्दछ र जसले मार्ग विचलनको बाटो अपनाउँछ उसले पथविचलनबाट आफ्नै नोक्सानी गर्दछ र म तिम्रो हाकिम होइन ।

१०९) र (हे पैगम्बर) तपाईलाई जुन आदेश पठाइन्छ त्यसको अनुशरण गर्दै जानुस् र (कष्टहरूमा) धैर्य गर्नुस्, यहाँसम्म कि अल्लाहले स्वयं फैसला गरिहालोस् । ऊ सबभन्दा राम्रो निर्णायक हो ।

وَاتَّبِعْ مَا يُوحَىٰٓ إِلَيْكَ وَاصْبِرْ حَتَّىٰ يَحْكُمَ اللَّهُ ۚ وَهُوَ خَيْرُ الْحَٰكِمِينَ ﴿١٠٩﴾



# सूरतु हूद-११




सूरतु हूद मक्की हो र यसमा १२३ आयतहरू र १० रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ. लाम. रा. । यो यस्तो किताब हो जसको आयतहरू ठोस छन् र बुद्धिमता सम्पन्न सबै कुराको ज्ञाताको तर्फबाट स्पष्टसंग व्याख्या गरिएको छ ।

الٓرٰ ۚ كِتٰبٌ اُحْكِمَتْ اٰيٰتُهٗ ثُمَّ فُصِّلَتْ مِنْ لَّدُنْ حَكِيْمٍ خَبِيْرٍ ﴿١﴾

२) यो कि अल्लाह बाहेक कसैको पूजा नगर । र म उसको तर्फबाट तिमीलाई सावधान गर्ने र शुभ सन्देश दिने वाला हूँ ।

اَلَّا تَعْبُدُوْٓا اِلَّا اللّٰهَ ؕ اِنَّنِيْ لَكُمْ مِّنْهُ نَذِيْرٌ وَّبَشِيْرٌ ﴿٢﴾

३) र यो कि आफ्नो पालनकर्तासित क्षमा याचना गर र उसैको सामु प्रायश्चित गर, उसले तिमीलाई एक निश्चित समयसम्म राम्रो जिन्दगी दिनेछ, र धेरै पुण्य गर्नेहरूलाई बढी प्रतिफल दिनेछ । र यदि तिमी विमुख हुन्छौ भने मलाई तिम्रो बारेमा क़ियामतको सजायको भय छ ।

وَّاَنِ اسْتَغْفِرُوْا رَبَّكُمْ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ يُمَتِّعْكُمْ مَّتَاعًا حَسَنًا اِلٰٓى اَجَلٍ مُّسَمًّى وَّيُؤْتِ كُلَّ ذِيْ فَضْلٍ فَضْلَهٗ ؕ وَاِنْ تَوَلَّوْا فَاِنِّيْٓ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ كَبِيْرٍ ﴿٣﴾

४) तिमी (सबै) लाई अल्लाह तिरै (फर्केर) जानु छ र ऊ प्रत्येक कुरोमा सामर्थ्यवान छ ।

اِلَى اللّٰهِ مَرْجِعُكُمْ ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٤﴾

५) याद राख यिनीहरूले आफ्ना

اَلَآ اِنَّهُمْ يَثْنُوْنَ صُدُوْرَهُمْ لِيَسْتَخْفُوْا مِنْهُ ؕ اَلَا حِيْنَ

يَسْتَغْشُونَ ثِيَابَهُمْ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ إِنَّهُ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ۝٥

हृदयलाई आवरणले छोप्छन्, ताकि अल्लाहबाट त्यस भित्रको कुरा लुकाउन सकुन् । सुनिराख, जुन बेला यिनीहरू लुगामा बेरिएका हुन्छन् त्यतिबेला पनि तिनीहरूको लुकेको र प्रकट कुराहरू सबैको उसलाई ज्ञान हुन्छ, निःसन्देह ऊ हृदयभित्र भएका सबै कुराहरू जान्दछ ।

وَمَا مِن دَابَّةٍ فِي الْأَرْضِ إِلَّا عَلَى اللَّهِ رِزْقُهَا وَيَعْلَمُ مُسْتَقَرَّهَا وَمُسْتَوْدَعَهَا كُلٌّ فِي كِتَابٍ مُّبِينٍ ۝٦

६) पृथ्वीमा हिलडुल गर्ने जे जति पनि प्राणीहरू छन् अल्लाह माथि सबैको रोजी निर्भर छ । उही उनका बसोबास गर्ने ठाउँ जान्दछ । र तिनलाई सुम्पिने ठाउँ पनि । सबै थोक किताबमा स्पष्ट रूपमा छन् ।

وَهُوَ الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ فِي سِتَّةِ أَيَّامٍ وَكَانَ عَرْشُهُ عَلَى الْمَاءِ لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا وَلَئِن قُلْتَ إِنَّكُم مَّبْعُوثُونَ مِن بَعْدِ الْمَوْتِ لَيَقُولَنَّ الَّذِينَ كَفَرُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ۝٧

७) र उहि नै (अल्लाह) हो जसले आकाशहरू र पृथ्वीलाई “छ” ६ दिनमा बनायो र (त्यसबेला) उसको सिंहासन पानी माथि थियो । (सृष्टिको उद्देश्य यो छ कि) उसले तिम्रो परीक्षा गरोस्, कि कर्मको दृष्टिले तिमी मध्ये को राम्रो छ । र यदि तपाई भन्नुहुन्छ कि मृत्यु पश्चात जीवित गरेपछि उठाइने छौ, भने काफिरहरूले जवाफ दिनेछन् कि यो त स्पष्ट रूपले जादू हो ।

وَلَئِنْ أَخَّرْنَا عَنْهُمُ الْعَذَابَ إِلَىٰ أُمَّةٍ مَّعْدُودَةٍ لَّيَقُولُنَّ مَا يَحْبِسُهُ أَلَا يَوْمَ يَأْتِيهِمْ لَيْسَ مَصْرُوفًا عَنْهُمْ وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ۝٨

८) र यदि एक निश्चित अवधिसम्म हामीले तिनीहरूमाथिको सजाय रोक्थ्यौ त भन्ने छन्ः कि कुन कुराले सजायलाई रोकिराखेको छ ।

हेर, जुन दिन सजाय तिनीहरूमाथि आउने छ त्यो सर्दैन र फेरि जुन कुराको उपहास गर्दै गरेका थिए त्यसले तिनलाई घेरिहाल्ने छ ।

وَلَئِنْ أَذَقْنَا الْإِنسَانَ مِنَّا رَحْمَةً ثُمَّ نَزَعْنَاهَا
مِنْهُ إِنَّهُ لَيَئُوسٌ كَفُورٌ ﴿٩﴾

९) र यदि हामीले मानिसलाई आफ्नो कुनै पुरस्कारको स्वाद चखाएर त्यसलाई वहाँबाट खोस्छौं भने त्यो (मानिस) धेरै निराश र कृतघ्न भइहाल्छ ।

وَلَئِنْ أَذَقْنَاهُ نَعْمَاءَ بَعْدَ ضَرَّاءَ مَسَّتْهُ لَيَقُولَنَّ
ذَهَبَ السَّيِّئَاتُ عَنِّي ۚ إِنَّهُ لَفَرِحٌ فَخُورٌ ﴿١٠﴾

१०) तर यदि त्यसलाई दु:ख पुगेपछि हामी आराम प्रदान गर्छौं भने प्रसन्न भई, भन्दछः कि सबै नराम्रा कुराहरू हामीबाट हटिसके । नि:सन्देह त्यो खुशी हुने र धेरै आत्मा प्रशंसक छ ।

إِلَّا الَّذِينَ صَبَرُوا وَعَمِلُوا الصَّالِحَاتِ أُولَٰئِكَ
لَهُم مَّغْفِرَةٌ وَأَجْرٌ كَبِيرٌ ﴿١١﴾

११) हो, जसले धैर्य गरे र असल कर्म गरे । तिनै हुन् जसका लागि क्षमा र ठूलो प्रतिफल छ ।

فَلَعَلَّكَ تَارِكٌ بَعْضَ مَا يُوحَىٰ إِلَيْكَ
وَضَائِقٌ بِهِ صَدْرُكَ أَن يَقُولُوا لَوْلَا أُنزِلَ
عَلَيْهِ كَنزٌ أَوْ جَاءَ مَعَهُ مَلَكٌ ۚ إِنَّمَا أَنتَ
نَذِيرٌ ۚ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ وَكِيلٌ ﴿١٢﴾

१२) संभवत: तिम्रो लागि उतारिएको अल्लाहका केही आदेश तिमीले छाडिदिन्छौ र यस कारणले तपाईको हृदय संकुचित हुन्छ कि काफिरहरूले भन्छन् कि उनीमाथि कुनै खजाना किन उतारिएन अथवा त्यसको साथमा कुनै फरिश्ता (दूत) किन आएन । (सुन्नुस्) तपाई त मात्र सावधान गर्नेवाला हौ र हरेक कुराको जिम्मेदारी अल्लाह माथि छ ।

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ فَأْتُوا بِعَشْرِ سُوَرٍ مِّثْلِهِ

१३) के यिनीहरूले भन्दछन् कि उसले

مُفْتَرَيٰتٍ وَّادْعُوْا مَنِ اسْتَطَعْتُمْ مِّنْ دُوْنِ اللّٰهِ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿١٣﴾

"कुरआन" आफैले रचेको हो र भनिदिनुस्: कि तिमीले पनि यस्तै दशवटा सूरहहरू रचेर ल्याऊ र अल्लाह बाहेक जसलाई चाहन्छौ आफ्नो साथमा बोलाएर ल्याऊ यदि तिमीहरू आफ्नो कुरामा साँचो छौ भने ।

فَاِلَّمْ يَسْتَجِيْبُوْا لَكُمْ فَاعْلَمُوْٓا اَنَّمَآ اُنْزِلَ بِعِلْمِ اللّٰهِ وَاَنْ لَّآ اِلٰهَ اِلَّا هُوَ ۚ فَهَلْ اَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٤﴾

१४) फेरि यदि तिनीहरूले तपाईको कुरा स्वीकार गर्दैनन्, भने त जानिराख कि त्यो कुरआन अल्लाहको ज्ञानले प्रकट गरिएको हो, र यो कि त्यसबाहेक अरु कोही पूजनीय छैन, तसर्थ (हे मुश्रिकहरू) के तिमीले पनि इस्लाम स्वीकार गर्दछौ ?

مَنْ كَانَ يُرِيْدُ الْحَيٰوةَ الدُّنْيَا وَزِيْنَتَهَا نُوَفِّ اِلَيْهِمْ اَعْمَالَهُمْ فِيْهَا وَهُمْ فِيْهَا لَا يُبْخَسُوْنَ ﴿١٥﴾

१५) जुन मानिसहरूले सांसारिक जीवन र यसका आकर्षक कुराहरूको लागि मरी मेटछन हामीले उनीहरूको सबै कर्महरूको प्रतिफल तिनीहरूलाई संसारमा नै दिन्छौ र यसमा हामीले कुनै कमी गर्दैनौ ।

اُولٰٓئِكَ الَّذِيْنَ لَيْسَ لَهُمْ فِى الْاٰخِرَةِ اِلَّا النَّارُ ۖ وَحَبِطَ مَا صَنَعُوْا فِيْهَا وَبٰطِلٌ مَّا كَانُوْا يَعْمَلُوْنَ ﴿١٦﴾

१६) यीनै ती मानिसहरू हुन् जसका निम्ति परलोकमा नर्कको आगो बाहेक अरु केही छैन, र जुन कर्म तिनीहरूले संसारमा गरे सबै बर्बाद र जेजति तिनीहरूले गर्दै गरे सबै निरर्थक हुने वाला छन् ।

اَفَمَنْ كَانَ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّهٖ وَيَتْلُوْهُ شَاهِدٌ مِّنْهُ وَمِنْ قَبْلِهٖ كِتٰبُ مُوْسٰٓى اِمَامًا وَّرَحْمَةً ۗ اُولٰٓئِكَ يُؤْمِنُوْنَ بِهٖ ۗ وَمَنْ يَّكْفُرْ بِهٖ مِنَ الْاَحْزَابِ

१७) के त्यो मानिस जसलाई आफ्नो पालनकर्ताको तर्फबाट स्पष्ट प्रमाण प्राप्तछ र उसपछि अल्लाहको

فَالنَّارُ مَوْعِدُهٗ ۚ فَلَا تَكُ فِىْ مِرْيَةٍ مِّنْهُ ۚ اِنَّهُ الْحَقُّ مِنْ رَّبِّكَ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يُؤْمِنُوْنَ ﴿١٧﴾

तर्फबाट आएको साक्षी (जिबरील) पनि छ र त्यो भन्दा पहिला मूसा (अलै.) को किताब मार्गदर्शक र वरदान आइसकेकाहोस्, (के यस्ता व्यक्ति पथभरष्ट हुन सक्दछ ?) यिनीहरूनै त्यसमाथि ईमान राख्दछन । र यिनी समुदायबाट जो यसको इन्कार गर्दछ, उसको अन्तिम बासस्थान (नर्कको) आगो हो । तसर्थ तिमीले यस (कुरआन) को सम्बन्धमा कोही शंका नगर्नु, यो तिम्रो पालनकर्ताबाट आएको पूर्ण सत्य हो, तर अधिकांश मानिसहरूले ईमान ल्याउँदैनन् ।

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ۗ اُولٰٓئِكَ يُعْرَضُوْنَ عَلٰى رَبِّهِمْ وَيَقُوْلُ الْاَشْهَادُ هٰٓؤُلَآءِ الَّذِيْنَ كَذَبُوْا عَلٰى رَبِّهِمْ ۚ اَلَا لَعْنَةُ اللّٰهِ عَلَى الظّٰلِمِيْنَ ﴿١٨﴾

१८) यस भन्दा बढी अत्याचारीको होला जसले अल्लाह बारे असत्यकुरा गर्दछ । यस्ता मानिसहरू अल्लाहको सामु, प्रस्तुत गरिनेछन् र सबै साक्षीहरूले भन्नेछन् कि यिनै मानिस हुन् जसले आफ्ना पालनकर्ताबारे झूठा कुरा भनेका थिए, खबरदार हुनु अत्याचारीहरूमाथि अल्लाहको धिक्कार छ ।

الَّذِيْنَ يَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ۗ وَهُمْ بِالْاٰخِرَةِ هُمْ كٰفِرُوْنَ ﴿١٩﴾

१९) जुन मानिसहरू अल्लाहको मार्गबाट रोक्दछन् र त्यसमा बक्रता खोजी राखछन् तिनीहरूनै परलोक (आखिरत) को इन्कार गर्दछन् ।

اُولٰٓئِكَ لَمْ يَكُوْنُوْا مُعْجِزِيْنَ فِى الْاَرْضِ وَمَا كَانَ لَهُمْ مِّنْ دُوْنِ اللّٰهِ مِنْ اَوْلِيَآءَ ۘ يُضٰعَفُ

२०) यिनीहरूले न धर्तीमा अल्लाहलाई हराउन सकछ र नत अल्लाह बाहेक

لَهُمُ الْعَذَابُ ۚ مَا كَانُوا يَسْتَطِيعُونَ السَّمْعَ وَمَا كَانُوا يُبْصِرُونَ ﴿٢٠﴾

कोही तिनीहरूको समर्थक हुनेछ । तिनीहरूलाई दोब्बर सजाय दिइनेछ, किनकि यिनीहरूले सुन्न सक्दैनथे र न त यो देख्न सक्दथे ।

أُولَٰئِكَ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ وَضَلَّ عَنْهُم مَّا كَانُوا يَفْتَرُونَ ﴿٢١﴾

२१) यिनीहरू नै हुन् जसले कि आफूलाई हानिमा पारे, र यिनीहरूले मानी आएका सबै मनगढन्ते कुराहरू यिनीहरूबाट हरायो ।

لَا جَرَمَ أَنَّهُمْ فِي الْآخِرَةِ هُمُ الْأَخْسَرُونَ ﴿٢٢﴾

२२) निःसन्देह यिनीहरू नै परलोकमा सबैभन्दा धेरै हानि भोग्नेछन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَأَخْبَتُوا إِلَىٰ رَبِّهِمْ أُولَٰئِكَ أَصْحَابُ الْجَنَّةِ ۖ هُمْ فِيهَا خَالِدُونَ ﴿٢٣﴾

२३) जुन मानिसहरूले ईमान ल्याए र सत्कर्म गरे र आफ्नो पालनकर्ताको अगाडि क्षमा याचना गरे, यिनै स्वर्गमा जानेहरू हुन्, सधैं त्यसमा रहनेछन् ।

مَثَلُ الْفَرِيقَيْنِ كَالْأَعْمَىٰ وَالْأَصَمِّ وَالْبَصِيرِ وَالسَّمِيعِ ۚ هَلْ يَسْتَوِيَانِ مَثَلًا ۚ أَفَلَا تَذَكَّرُونَ ﴿٢٤﴾

२४) यी दुवै समुदाय (काफिर र मोमिन) को उदाहरण यस्तो छ, जस्तो एउटा अन्धा र बहिरा होस् र अर्को देख्ने सुन्ने, त के दुवैको अवस्था बराबर हुनसक्छ ? अनि तिमीले किन शिक्षा लिदैनौ ।

وَلَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِ إِنِّي لَكُمْ نَذِيرٌ مُّبِينٌ ﴿٢٥﴾

२५) र हामीले "नूहलाई" उनको कौमतिर रसूल बनाएर पठायौं (उनले भने) कि मैले तिमीलाई खुल्लमखुल्ला सावधान गराउने आएको हूँ ।

أَن لَّا تَعْبُدُوا إِلَّا اللَّهَ ۖ إِنِّي أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ أَلِيمٍ ﴿٢٦﴾

२६) कि तिमीहरू अल्लाह बाहेक कसैको पूजा नगर । मलाई तिम्रो बारेमा कष्टदायक सजाय हुने दिनको भय छ ।

२७) अनि उनको समुदायका काफिरहरूको नायकहरूले भन्न थाले: कि हामीले तिमीलाई आफू जस्तै एउटा मानिसको रूपमा देख्छौं र यो पनि देख्छौं कि तिम्रा अनुयायीहरू तल्लो श्रेणीका मानिसहरू बाहेक कोही छैन जसले नजानी बुझीकन तिम्रो अनुयायी भएका छन् । हामीले त हामीहरू भन्दा तिमीमा केही बढी विशेषता देखेका छैनौं बरु तिमीलाई हामीले झूठा ठान्दछौं ।

فَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِنْ قَوْمِهِ مَا نَرٰىكَ
إِلَّا بَشَرًا مِّثْلَنَا وَمَا نَرٰىكَ اتَّبَعَكَ إِلَّا الَّذِينَ
هُمْ أَرَاذِلُنَا بَادِيَ الرَّأْيِ ۚ وَمَا نَرٰى لَكُمْ عَلَيْنَا
مِنْ فَضْلٍ بَلْ نَظُنُّكُمْ كٰذِبِينَ ﴿٢٧﴾

२८) नूहले भने कि हे मेरो सम्प्रदायका मानिसहरू, बताऊ यदि म आफ्नो पालनकर्ताबाट (स्पष्ट) प्रमाण राख्दछु र उसले मलाई आफ्नो तर्फबाट दया प्रदान गरेको छ, त्यो तिम्रो दृष्टिमा पर्दैन भने त के हामीले यसको निम्ति तिमीलाई बाध्य गरौं ? जबकि तिमी त्यसबाट अप्रसन्न छौ ।

قَالَ يٰقَوْمِ أَرَءَيْتُمْ إِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّي
وَاٰتٰىنِي رَحْمَةً مِّنْ عِنْدِهِ فَعُمِّيَتْ عَلَيْكُمْ ۖ
أَنُلْزِمُكُمُوهَا وَأَنْتُمْ لَهَا كٰرِهُونَ ﴿٢٨﴾

२९) र हे मेरो समुदायहरू ! म यस (सन्देश) बापत तिमीसित धनसम्पत्ति माँगिदन, मेरो पुरस्कार त केवल अल्लाहको जिम्मामा छ, र ईमानवाला मानिसहरूलाई म लखेटन सक्दिनँ। तिनीहरू आफ्नो पालनकर्तासित साक्षातकार प्राप्त गर्नेवाला छन्, तर म तिमीहरूलाई अज्ञानतापूर्ण कार्य गरिराखेका देख्दछु ।

وَيٰقَوْمِ لَا أَسْئَلُكُمْ عَلَيْهِ مَالًا ۖ إِنْ أَجْرِيَ إِلَّا عَلَى
اللّٰهِ وَمَا أَنَا بِطَارِدِ الَّذِينَ اٰمَنُوا ۚ إِنَّهُمْ مُّلٰقُوا رَبِّهِمْ
وَلٰكِنِّي أَرٰىكُمْ قَوْمًا تَجْهَلُونَ ﴿٢٩﴾

३०) र हे मेरा कौमका मानिसहरू यदि मैले तिनीहरूलाई निकालि दिएँ

وَيٰقَوْمِ مَنْ يَّنْصُرُنِي مِنَ اللّٰهِ إِنْ طَرَدْتُّهُمْ ۚ أَفَلَا
تَذَكَّرُونَ ﴿٣٠﴾

भने अल्लाहबाट कसले मेरो मद्दत गर्न सक्दछ । के तिमी केही उपदेश ग्रहण गर्दैनौ ।

وَلَآ أَقُولُ لَكُمْ عِندِى خَزَآئِنُ ٱللَّهِ وَلَآ أَعْلَمُ
ٱلْغَيْبَ وَلَآ أَقُولُ إِنِّى مَلَكٌ وَلَآ أَقُولُ لِلَّذِينَ
تَزْدَرِىٓ أَعْيُنُكُمْ لَن يُؤْتِيَهُمُ ٱللَّهُ خَيْرًا ۖ ٱللَّهُ أَعْلَمُ
بِمَا فِىٓ أَنفُسِهِمْ ۖ إِنِّىٓ إِذًا لَّمِنَ ٱلظَّٰلِمِينَ ﴿٣١﴾

३१) म तिमीसित यो भन्दिनँ कि मसित अल्लाहको खजाना छ र नत यो कि म अदृश्य कुरो जान्दछु र नत यो भन्छु कि म फरिश्ता हूँ र न तिनीहरूको बारेमा केही भन्दछु, जसलाई तिमीले हेलाको दृष्टिले हेर्दैछौ, कि अल्लाहले तिनीहरूलाई राम्रो प्रतिफल दिनेछैन । जुन उनका हृदयमा छन्, त्यसलाई अल्लाह जान्दछ । यदि म यस्तो भन्छु भने निःसन्देह अत्याचारीहरूमध्येको हुनेछु ।

قَالُوا۟ يَٰنُوحُ قَدْ جَٰدَلْتَنَا فَأَكْثَرْتَ جِدَٰلَنَا فَأْتِنَا
بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿٣٢﴾

३२) सम्प्रदाय वालाले भने: कि हे नूह (अलै)! तिमीले हामीसँग धेरै विवाद गर्‍यौ यदि तिमी साँचो हौ भने जुन कुरोबाट हामीलाई तर्साइराखेका छौ त्यो हाम्रो अगाडि लिएर आऊ ।

قَالَ إِنَّمَا يَأْتِيكُم بِهِ ٱللَّهُ إِن شَآءَ وَمَآ أَنتُم
بِمُعْجِزِينَ ﴿٣٣﴾

३३) नूह (अलै) ले भने कि यसलाई त अल्लाहले चाहे भने मात्र ल्याउन सक्छ र तिमीले उसलाई कुनै प्रकारले विवश गर्न सक्दैनौ ।

وَلَا يَنفَعُكُمْ نُصْحِىٓ إِنْ أَرَدتُّ أَنْ أَنصَحَ لَكُمْ إِن
كَانَ ٱللَّهُ يُرِيدُ أَن يُغْوِيَكُمْ ۚ هُوَ رَبُّكُمْ وَإِلَيْهِ
تُرْجَعُونَ ﴿٣٤﴾

३४) र यदि म चाहन्छु कि तिम्रो भलो गरूँ र अल्लाह यो चाहन्छ कि तिमीलाई मार्ग विचलित गरोस् त मेरो शुभेक्षा तिमीलाई कुनै फाइदा पुऱ्याउन सक्दैन । उही नै तिम्रो

पालनकर्ता हो र तिमीलाई उसैतिर फर्किजानु पर्नेछ ।

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ إِنِ افْتَرَيْتُهُ فَعَلَيَّ إِجْرَامِي وَأَنَا بَرِيءٌ مِّمَّا تُجْرِمُونَ ﴿٣٥﴾

३५) के यिनीहरूले भन्दछन्: कि यसलाई पैगम्बर आफैले बनाई हालेको छ त भनिदिनुस्: कि यदि मैले आफैले यसलाई बनाएको छु भने त्यसको अपराध म माथि छ र जुन अपराध तिमीहरूले गर्दछौ त्यसको जिम्मेवारीबाट म मुक्त छु ।

وَأُوحِيَ إِلَىٰ نُوحٍ أَنَّهُ لَن يُؤْمِنَ مِن قَوْمِكَ إِلَّا مَن قَدْ آمَنَ فَلَا تَبْتَئِسْ بِمَا كَانُوا يَفْعَلُونَ ﴿٣٦﴾

३६) नूहमाथी प्रकाशना (वह्य) गराइयो कि तिम्रो कौममा जसले ईमान ल्याएका छन्, तिनीहरू बाहेक अरु कोही ईमान ल्याउने छैन, तसर्थ जुन काम यिनीहरूले गरिराखेका छन त्यसको कारणले दुःखी नहुनु ।

وَاصْنَعِ الْفُلْكَ بِأَعْيُنِنَا وَوَحْيِنَا وَلَا تُخَاطِبْنِي فِي الَّذِينَ ظَلَمُوا ۚ إِنَّهُم مُّغْرَقُونَ ﴿٣٧﴾

३७) र एउटा डुङ्गा हाम्रो आँखा अगाडी हाम्रो आदेशानुसार निर्माण गर र जुन मानिसहरू अत्याचारी छन्, तिनीहरूको बारेमा हामीसित केही नभन्नु किनभने तिनीहरू अवश्य नै डुबाइने छन् ।

وَيَصْنَعُ الْفُلْكَ وَكُلَّمَا مَرَّ عَلَيْهِ مَلَأٌ مِّن قَوْمِهِ سَخِرُوا مِنْهُ ۚ قَالَ إِن تَسْخَرُوا مِنَّا فَإِنَّا نَسْخَرُ مِنكُمْ كَمَا تَسْخَرُونَ ﴿٣٨﴾

३८) तसर्थ नूह (अलै) ले डुङ्गा निर्माण गर्न शुरू गरिहाले । र जब उनको कौमका नाइकेहरू उनको छेउबाट जान्थे त उनको उपहास गर्दथे । उनी भन्थे: "कि यदि तिमीले हाम्रो उपहास गर्छौ भने, जुन रूपमा यो उपहास गर्दछौ त्यसतै कुनै समयमा हामीले पनि तिम्रो हाँसो गर्ने छौं ।"

३९) तिमीलाई शीघ्र थाहा हुनेछ, कि कसमाथि सजाय आउँछ जसले कि उसलाई अपमानित गर्नेछ। र उसमाथि सधैं सजाय भइराख्ने छ ?

فَسَوْفَ تَعْلَمُونَ مَنْ يَأْتِيهِ عَذَابٌ يُخْزِيهِ وَيَحِلُّ عَلَيْهِ عَذَابٌ مُقِيمٌ ﴿٣٩﴾

४०) यहाँसम्म कि जब हाम्रो आदेश आई पुग्यो र मूल फुट्नलाग्यो हामीले भन्यौं:, त्यस डुङ्गामा हर किसिमको जान्दारका एक जोडा (नर र नारी) बसालिहाल, र आफ्नो घरका मान्छेहरूलाई पनि तिनीहरू बाहेक जसमाथि अल्लाहको आदेश पूर्ण भइसकेको छ र सबै ईमानवालाहरूलाई पनि, उनीसँग ईमान ल्याउनेहरू निकै कम थिए ।

حَتَّىٰ إِذَا جَاءَ أَمْرُنَا وَفَارَ التَّنُّورُ قُلْنَا احْمِلْ فِيهَا مِنْ كُلٍّ زَوْجَيْنِ اثْنَيْنِ وَأَهْلَكَ إِلَّا مَنْ سَبَقَ عَلَيْهِ الْقَوْلُ وَمَنْ آمَنَ ۚ وَمَا آمَنَ مَعَهُ إِلَّا قَلِيلٌ ﴿٤٠﴾

४१) नूहले भने: "यस डुङ्गामा बसिहाल, अल्लाहको नामले यो हिंड्छ र रोकिन्छ। निःसन्देह मेरो पालनकर्ता ठूलो क्षमादाता, र दयालु छ ।"

وَقَالَ ارْكَبُوا فِيهَا بِسْمِ اللَّهِ مَجْرَاهَا وَمُرْسَاهَا ۚ إِنَّ رَبِّي لَغَفُورٌ رَحِيمٌ ﴿٤١﴾

४२) त्यस डुङ्गाले तिनीहरूलाई लिएर पहाड जस्ता अग्ला छाल वा तरङ्गहरूमा हिंड्न थाल्यो। त्यसबेला नूहले आफ्नो छोरालाई, जो अलग एउटा छेउमा थियो, भने: कि हे मेरो प्यारो छोरो "हाम्रो साथमा सवार भइहाल, र काफिरहरूमा शम्मिलित नहोऊ ।"

وَهِيَ تَجْرِي بِهِمْ فِي مَوْجٍ كَالْجِبَالِ وَنَادَىٰ نُوحٌ ابْنَهُ وَكَانَ فِي مَعْزِلٍ يَا بُنَيَّ ارْكَبْ مَعَنَا وَلَا تَكُنْ مَعَ الْكَافِرِينَ ﴿٤٢﴾

४३) उसले भन्यो: "कि म कुनै पहाड माथि चढीहाल्छु जसले मलाई पानीबाट बचाई हाल्छ !" उहाँले

قَالَ سَآوِي إِلَىٰ جَبَلٍ يَعْصِمُنِي مِنَ الْمَاءِ ۚ قَالَ لَا عَاصِمَ الْيَوْمَ مِنْ أَمْرِ اللَّهِ إِلَّا مَنْ رَحِمَ ۚ وَحَالَ بَيْنَهُمَا الْمَوْجُ فَكَانَ مِنَ الْمُغْرَقِينَ ﴿٤٣﴾

भनेकिः "आज अल्लाहको अज़ाबबाट कोही पनि बचाउनेवाला छैन, उसबाहेक जस माथि अल्लाहको कृपा हुन्छ ।" यसैबीच दुवैको बीचमा त्यतिखेरै छाल आएर अवरोध बनिहाल्यो र त्यो पनि डुबिने मध्येको भइहाल्यो ।

४४) आदेश दिइयोः "हे पृथ्वी आफ्नो पानी सोसिहाल र हे आकाश रोकिहाल," अनि त्यति खेरै पानी रोकियो र सबै काम समाप्त गरियो र डुङ्गा जूदि पहाडमा गई अडिहाल्यो र भनियोः "कि अन्यायीहरूमाथि तिरस्कार (लानत) होस् ।"

وَقِيلَ يَٰٓأَرۡضُ ٱبۡلَعِي مَآءَكِ وَيَٰسَمَآءُ أَقۡلِعِي وَغِيضَ ٱلۡمَآءُ وَقُضِيَ ٱلۡأَمۡرُ وَٱسۡتَوَتۡ عَلَى ٱلۡجُودِيِّۖ وَقِيلَ بُعۡدٗا لِّلۡقَوۡمِ ٱلظَّٰلِمِينَ ٤٤

४५) नूहले आफ्ना पालनकर्तालाई पुकारे र भनेः "कि हे पालनकर्ता मेरो छोरा पनि मेरै परिवार मध्येको हो । निःसन्देह तिम्रो वचन पूर्ण सत्य छ र तिमी सबैभन्दा राम्रो हाकिम हौ ।"

وَنَادَىٰ نُوحٞ رَّبَّهُۥ فَقَالَ رَبِّ إِنَّ ٱبۡنِي مِنۡ أَهۡلِي وَإِنَّ وَعۡدَكَ ٱلۡحَقُّ وَأَنتَ أَحۡكَمُ ٱلۡحَٰكِمِينَ ٤٥

४६) अल्लाहले आदेश दियोः "कि हे नूह ! निःसन्देह ऊ तिम्रो परिवारबाट होइन, उसको काम पूर्णरूपले गलत छ, तिमीले कदापि त्यो वस्तु माँग्नु हुँदैन, जसको तिमीलाई पूर्ण ज्ञान छैन । म तिमीलाई उपदेश गर्दछु कि तिमी मूर्खहरू मध्येबाट नहोऊ ।"

قَالَ يَٰنُوحُ إِنَّهُۥ لَيۡسَ مِنۡ أَهۡلِكَۖ إِنَّهُۥ عَمَلٌ غَيۡرُ صَٰلِحٖۖ فَلَا تَسۡـَٔلۡنِ مَا لَيۡسَ لَكَ بِهِۦ عِلۡمٌۖ إِنِّيٓ أَعِظُكَ أَن تَكُونَ مِنَ ٱلۡجَٰهِلِينَ ٤٦

قَالَ رَبِّ اِنِّیۡۤ اَعُوۡذُ بِكَ اَنۡ اَسۡـَٔلَكَ مَا لَيۡسَ لِیۡ بِهٖ عِلۡمٌ ؕ وَاِلَّا تَغۡفِرۡ لِیۡ وَتَرۡحَمۡنِیۡۤ اَكُنۡ مِّنَ الۡخٰسِرِيۡنَ ﴿۴۷﴾

४७) नूहले भने: मेरो पालनकर्ता ! म तिमीसँग शरण माँग्दछु ती कुराहरूको सम्बन्धमा प्रश्न गर्ने बारेमा जसको कि मलाई ज्ञान छैन । यदि तिमीले मलाई क्षमा गर्दैनौ र म माथि दया गर्दैनौ भने, म ठूलो हानिमा पर्नेछु ।''

قِيۡلَ يٰـنُوۡحُ اهۡبِطۡ بِسَلٰمٍ مِّنَّا وَبَرَكٰتٍ عَلَيۡكَ وَعَلٰۤى اُمَمٍ مِّمَّنۡ مَّعَكَ ؕ وَاُمَمٌ سَنُمَتِّعُهُمۡ ثُمَّ يَمَسُّهُمۡ مِّنَّا عَذَابٌ اَلِيۡمٌ ﴿۴۸﴾

४८) आदेश भयो: ''कि नूह (डुङ्गाबाट) तल झरी हाल, हाम्रो तरफबाट शान्ति र तिमी र तिम्रो साथका अन्य साथीहरू माथि अनुग्रह हुनेछ ! र अनेक यस्ता समुदाय हुनेछन् जसलाई हामीले (संसारका) आनन्दहरू प्रदान गर्ने छौं, तर तिनीहरूलाई हाम्रो तर्फबाट कष्टदायक सजाय पुग्नेछ ।

تِلۡكَ مِنۡ اَنۡۢبَآءِ الۡغَيۡبِ نُوۡحِيۡهَاۤ اِلَيۡكَ ۚ مَا كُنۡتَ تَعۡلَمُهَاۤ اَنۡتَ وَلَا قَوۡمُكَ مِنۡ قَبۡلِ هٰذَا ۛؕ فَاصۡبِرۡ ۛؕ اِنَّ الۡعَاقِبَةَ لِلۡمُتَّقِيۡنَ ﴿۴۹﴾

४९) यी (समाचारहरू) अदृश्यका खबरहरू हुन् जुन कि हामीले तपाईतिर वह्यबाट पठाउँदछौं र तिनको जानकारी यसभन्दा अगाडि न तपाईलाई थियो न त तपाईको समुदायलाई । तसर्थ धैर्य गर्नु । किन भने अन्तिममा परिणाम अल्लाहसित डर्नेहरूको राम्रो हुन्छ ।

وَاِلٰى عَادٍ اَخَاهُمۡ هُوۡدًا ؕ قَالَ يٰقَوۡمِ اعۡبُدُوا اللّٰهَ مَا لَـكُمۡ مِّنۡ اِلٰهٍ غَيۡرُهٗ ؕ اِنۡ اَنۡتُمۡ اِلَّا مُفۡتَرُوۡنَ ﴿۵۰﴾

५०) र हामीले आद समुदाय तिर तिनीहरू कै भाइ हूदलाई पठायौं । उनले भने: कि हे मेरो समुदायका मानिसहरू ! अल्लाहकै उपासना गर, उसबाहेक तिम्रो अरु कोही सत्य पूजनीय छैन । तिमीहरू (ऊ सित

अरुलाई दाँजेर) मात्र जालझेल गर्दैछौ ।''

يٰقَوْمِ لَآ اَسْـَٔلُكُمْ عَلَيْهِ اَجْرًا ۗ اِنْ اَجْرِيَ اِلَّا عَلَى الَّذِيْ فَطَرَنِيْ ۗ اَفَلَا تَعْقِلُوْنَ ﴿٥١﴾

५१) हे मेरा कौमका मानिसहरू ! म यस (सन्देश) बापत तिमीसित कुनै पारिश्रमिक माँग्दिन । मेरो पुरस्कार त उसको जिम्मामा छ, जसले मलाई सृष्टि गरेको छ । अनि के तैपनि तिमीले यो कुरा बुझ्दैनौ ।

وَيٰقَوْمِ اسْتَغْفِرُوْا رَبَّكُمْ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ يُرْسِلِ السَّمَآءَ عَلَيْكُمْ مِّدْرَارًا وَّيَزِدْكُمْ قُوَّةً اِلٰى قُوَّتِكُمْ وَلَا تَتَوَلَّوْا مُجْرِمِيْنَ ﴿٥٢﴾

५२) हे मेरो समुदायका मानिसहरू! तिमी आफ्नो पालनकर्तासित आफ्नो पापको लागि क्षमा याचना गर, अनि उसको अगाडि प्रायश्चित गर । जसबाट उसले तिमी माथि आकाशबाट मुसलधारे पानी वर्षाउँने बादल पठाई र तिम्रो शक्तिमा अझै शक्तिको बृद्धि गर्नेछ । र तिमी पाप गर्दै विमुख नहोऊ ।

قَالُوْا يٰهُوْدُ مَا جِئْتَنَا بِبَيِّنَةٍ وَّمَا نَحْنُ بِتَارِكِيْٓ اٰلِهَتِنَا عَنْ قَوْلِكَ وَمَا نَحْنُ لَكَ بِمُؤْمِنِيْنَ ﴿٥٣﴾

५३) तिनीहरूले भने:, ''हे हूद ! तिमीले हाम्रो सामु कुनै स्पष्ट प्रमाण ल्याएनौ र हामीले (मात्र) तिम्रो भनाईको भरमा न त आफ्ना देवताहरूलाई छाड्ने छौं नत तिमीमाथि विश्वास गर्ने छौं ।''

اِنْ نَّقُوْلُ اِلَّا اعْتَرٰىكَ بَعْضُ اٰلِهَتِنَا بِسُوْٓءٍ ۗ قَالَ اِنِّيْٓ اُشْهِدُ اللّٰهَ وَاشْهَدُوْٓا اَنِّيْ بَرِيْٓءٌ مِّمَّا تُشْرِكُوْنَ ﴿٥٤﴾

५४) अपितु हामीले त यो ठान्दछौं कि हाम्रो कुनै देवताले तिमीलाई नराम्रो असर पारी दिएको छ । उनले भने: ''कि म अल्लाहलाई साक्षी राखेर भन्दछु र तिमी पनि साक्षी बन'' कि जसलाई तिमीले अल्लाहको साझेदारी

ठहऱ्याउँछौ, मेरो तिनीहरूसँग कुनै सम्बन्ध छैन ।

५५) अर्थात (जसको अल्लाह बाहेक पूजा गर्दछौ,) तिमी सबै मिलेर मेरो विरुद्धमा जे षड्यन्त्र गर्न चाहन्छौ गरिहाल, र यसमा मलाई कुनै अवकाश नदेऊ ।

مِن دُونِهِۦ فَكِيدُونِي جَمِيعًا ثُمَّ لَا تُنظِرُونِ ٥٥

५६) म अल्लाह माथि, जो मेरो र तिम्रो सबैको पालनकर्ता हो, भरोसा गर्दछु । पृथ्वीमा रहेका सबै प्रणीहरूको टाउको उसैले थामेको छ । निःसन्देह मेरो पालनकर्ता सत्य बाटोमा छ ।

إِنِّي تَوَكَّلْتُ عَلَى ٱللَّهِ رَبِّي وَرَبِّكُم ۚ مَّا مِن دَآبَّةٍ إِلَّا هُوَ ءَاخِذٌۢ بِنَاصِيَتِهَآ ۚ إِنَّ رَبِّي عَلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ٥٦

५७) यदि तिमी विमुख हुन्छौ भने जुन सन्देश मेरो हातबाट तिमीतिर पठाइएको छ, त्यो मैले तिमीलाई पुऱ्याइसकेको छु, र मेरो पालनकर्ताले तिम्रो ठाउँमा अरु मानिसहरूलाई ल्याई स्थापित गर्ने छ, र तिमीले अल्लाहको केही नोक्सानी गर्न सक्दैनौ । मेरो पालनकर्ता त प्रत्येक कुरा माथि संरक्षक छ ।

فَإِن تَوَلَّوْا فَقَدْ أَبْلَغْتُكُم مَّآ أُرْسِلْتُ بِهِۦٓ إِلَيْكُمْ ۚ وَيَسْتَخْلِفُ رَبِّي قَوْمًا غَيْرَكُمْ وَلَا تَضُرُّونَهُۥ شَيْـًٔا ۚ إِنَّ رَبِّي عَلَىٰ كُلِّ شَيْءٍ حَفِيظٌ ٥٧

५८) र जब हाम्रो आदेश आइपुग्यो, त हामीले "हूदलाई" र उनको मोमिन साथीहरूलाई आफ्नो कृपाले बचाइहाल्यौं, र तिनीहरूलाई गम्भीर सजायबाट मुक्त गऱ्यौ ।

وَلَمَّا جَآءَ أَمْرُنَا نَجَّيْنَا هُودًا وَٱلَّذِينَ ءَامَنُوا۟ مَعَهُۥ بِرَحْمَةٍ مِّنَّا وَنَجَّيْنَٰهُم مِّنْ عَذَابٍ غَلِيظٍ ٥٨

५९) यो आदको समुदाय थियो, जसले अल्लाहका निशानीहरूलाई ईन्कार

وَتِلْكَ عَادٌ ۖ جَحَدُوا۟ بِـَٔايَٰتِ رَبِّهِمْ وَعَصَوْا۟ رُسُلَهُۥ وَٱتَّبَعُوٓا۟ أَمْرَ كُلِّ جَبَّارٍ عَنِيدٍ ٥٩

गरे, र उसका रसूलहरूको आज्ञा उल्लंघन गरे, र प्रत्येक अहंकारी र अटेरीको भनाई माने ।

وَأُتْبِعُوا فِي هَٰذِهِ الدُّنْيَا لَعْنَةً وَيَوْمَ الْقِيَامَةِ ۗ
أَلَا إِنَّ عَادًا كَفَرُوا رَبَّهُمْ ۗ أَلَا بُعْدًا لِّعَادٍ قَوْمِ هُودٍ ﴿٦٠﴾

६०) र यस संसारमा पनि उनीहरू तिरस्कृत रहे र कियामतको दिनमा पनि तिनीहरूको साथमा तिरस्कार हुनेछ । हेर: "आद समुदायले" आफ्नो पालनकर्तासित कुफ्र गरे । सुनिराख हूदको जाति आदमाथि धिक्कार छ ।

وَإِلَىٰ ثَمُودَ أَخَاهُمْ صَالِحًا ۚ قَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ
مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ هُوَ أَنشَأَكُم مِّنَ الْأَرْضِ
وَاسْتَعْمَرَكُمْ فِيهَا فَاسْتَغْفِرُوهُ ثُمَّ تُوبُوا إِلَيْهِ ۚ
إِنَّ رَبِّي قَرِيبٌ مُّجِيبٌ ﴿٦١﴾

६१) र "समूद" को समुदायतिर तिनीहरूको भाइ "सालेहलाई" (पठायौं) त उनले भने: "हे मेरो कौमका मानिसहरू ! तिमी अल्लाह कै पूजा गर उस बाहेक तिम्रो अरु कोही सत्य पूजनीय छैन, उसैले धर्तीबाट तिम्रो उत्पात गऱ्यो र त्यसैमा स्थापित गऱ्यो, तसर्थ ऊसित क्षमायाचना गर र उसको अगाडि प्रायश्चित गर । नि:सन्देह मेरो पालनकर्ता नजिक पनि छ र (प्रार्थनालाई) स्वीकार गर्नेवाला (पनि) छ ।"

قَالُوا يَا صَالِحُ قَدْ كُنتَ فِينَا مَرْجُوًّا قَبْلَ هَٰذَا ۖ أَتَنْهَانَا
أَن نَّعْبُدَ مَا يَعْبُدُ آبَاؤُنَا وَإِنَّنَا لَفِي شَكٍّ مِّمَّا
تَدْعُونَا إِلَيْهِ مُرِيبٍ ﴿٦٢﴾

६२) तिनीहरूले भने: हे "सालेह" ! यसभन्दा अगाडि हामीले तिमीबाट धेरै आशा गर्दथ्यौं । के तिमीले हामीलाई ती कुराहरूको पूजाबाट मनाही गर्दछौ, जुन हाम्रा पूर्वजहरूले गर्दै आएका हुन् ? र जुन कुरातिर तिमीले हामीलाई आव्हान गर्दछौ, यसमा हामीलाई गम्भीर शंका छ ।"

قَالَ يَٰقَوْمِ أَرَءَيْتُمْ إِن كُنتُ عَلَىٰ بَيِّنَةٍ مِّن رَّبِّي وَءَاتَىٰنِي مِنْهُ رَحْمَةً فَمَن يَنصُرُنِي مِنَ ٱللَّهِ إِنْ عَصَيْتُهُۥ فَمَا تَزِيدُونَنِي غَيْرَ تَخْسِيرٍ ﴿٦٣﴾

६३) सालेहले भने: “हे मेरो कौम ! यस कुरातिर विचार गर कि यदि मसँग आफ्नो पालनकर्ताको स्पष्ट प्रमाण छ र उसले मलाई आफ्नो तर्फबाट रहमत प्रदान गरेको छ, र फेरि मैले अल्लाहको आदेश उल्लंघन गरें भने उसको अगाडि कसले मेरो सहायता गर्नेछ ? तिमीले त मेरो हानि वृद्धि गरिरहेका छौ ।”

وَيَٰقَوْمِ هَٰذِهِۦ نَاقَةُ ٱللَّهِ لَكُمْ ءَايَةً فَذَرُوهَا تَأْكُلْ فِيٓ أَرْضِ ٱللَّهِ وَلَا تَمَسُّوهَا بِسُوٓءٍ فَيَأْخُذَكُمْ عَذَابٌ قَرِيبٌ ﴿٦٤﴾

६४) र हे मेरो समुदायका मानिसहरू ! यो अल्लाहको ऊँटनी तिम्रो निम्ति पठाइएको एउटा चमत्कार हो तसर्थ यसलाई छाडिदेऊ, ताकि अल्लाहको पृथ्वीमा चरोस् र त्यसलाई कुनै प्रकारको दुःख नदिनु, अन्यथा तिमीलाई शीघ्र नै सजाय आइसमात्ने छ ।

فَعَقَرُوهَا فَقَالَ تَمَتَّعُوا۟ فِي دَارِكُمْ ثَلَٰثَةَ أَيَّامٍ ذَٰلِكَ وَعْدٌ غَيْرُ مَكْذُوبٍ ﴿٦٥﴾

६५) तैपनि तिनीहरूले त्यसको घुँडाको नसा काटेर मारिहाले, अनि सालेहले भने: “कि आफ्ना घरहरूमा तीन दिनसम्म आनन्द लिइहाल । (त्यसपछि तिम्रो अन्त हुनेछ) यो वचन असत्य होइन ।”

فَلَمَّا جَآءَ أَمْرُنَا نَجَّيْنَا صَٰلِحًا وَٱلَّذِينَ ءَامَنُوا۟ مَعَهُۥ بِرَحْمَةٍ مِّنَّا وَمِنْ خِزْيِ يَوْمِئِذٍ إِنَّ رَبَّكَ هُوَ ٱلْقَوِيُّ ٱلْعَزِيزُ ﴿٦٦﴾

६६) फेरि जब हाम्रो आदेश आइहाल्यो तब हामीले सालेह र उनको साथमा ईमान ल्याएकाहरूलाई आफ्नो कृपाले बचाइहाल्यौं, र त्यस दिनको तिरस्कारबाट पनि । निःसन्देह तिम्रो पालनकर्ता एकदम बलियो र सर्वशक्तिमान छ ।

وَأَخَذَ الَّذِينَ ظَلَمُوا الصَّيْحَةُ فَأَصْبَحُوا فِي دِيَارِهِمْ جَاثِمِينَ ﴿٦٧﴾

६७) र अत्याचारीहरूलाई शक्तिशाली विस्फोटले समातिहाल्यो अनि तिनी आफ्नै घरहरूमा घोप्टो परिरहे ।

كَأَن لَّمْ يَغْنَوْا فِيهَا ۗ أَلَا إِنَّ ثَمُودَا كَفَرُوا رَبَّهُمْ ۗ أَلَا بُعْدًا لِّثَمُودَ ﴿٦٨﴾

६८) यसरी जस्तो कि तिनीहरू कहिल्यै त्यसमा बसेकै थिएनन् । सुनिराखः "कि समूद समुदायले आफ्नो पालनकर्तालाई इन्कार गरे ।" सुनिराखः कि समूदजाति तिरस्कृत भए ।"

وَلَقَدْ جَاءَتْ رُسُلُنَا إِبْرَاهِيمَ بِالْبُشْرَىٰ قَالُوا سَلَامًا ۖ قَالَ سَلَامٌ ۖ فَمَا لَبِثَ أَن جَاءَ بِعِجْلٍ حَنِيذٍ ﴿٦٩﴾

६९) र हाम्रा फरिश्ताहरू इब्राहीमको सामु शुभ सन्देश लिएर पुगे र "सलाम" भने उनले पनि जवाफमा "सलाम" भने । र एकछिन पनि बित्न नपाउँदै इब्राहीमले एउटा पोलिएको बाछो ल्याए ।

فَلَمَّا رَأَىٰ أَيْدِيَهُمْ لَا تَصِلُ إِلَيْهِ نَكِرَهُمْ وَأَوْجَسَ مِنْهُمْ خِيفَةً ۚ قَالُوا لَا تَخَفْ إِنَّا أُرْسِلْنَا إِلَىٰ قَوْمِ لُوطٍ ﴿٧٠﴾

७०) तर जब उनले देखे कि तिनीहरूका हात अगाडि बढी राखेका छैनन् त उनले तिनीहरूलाई अपरिचित ठानेर मनमा डरको अनुभव गर्न लागे । (स्वर्गदूतले) भने कि नडर्नुस्, हामी त "लूतको" कौमतिर पठाइएका हौं ।

وَامْرَأَتُهُ قَائِمَةٌ فَضَحِكَتْ فَبَشَّرْنَاهَا بِإِسْحَاقَ وَمِن وَرَاءِ إِسْحَاقَ يَعْقُوبَ ﴿٧١﴾

७१) र उनको (इब्राहीमकी) श्रीमती (नजिकै) उभेकी थिइन् हाँस्न थालिन्, त हामीले तिनलाई इसहाकको र इस्हाक पछि याकूबको (जन्महुने) शुभ समाचार दियौं ।

قَالَتْ يَا وَيْلَتَىٰ أَأَلِدُ وَأَنَا عَجُوزٌ وَهَٰذَا بَعْلِي شَيْخًا ۖ إِنَّ هَٰذَا لَشَيْءٌ عَجِيبٌ ﴿٧٢﴾

७२) तिनले भनिन्: मलाई अफसोचको कुरा छ ! के मैले बच्चा जन्म दिनेछु ? म त बृद्धा हूँ र यिनी मेरो

पति पनि बृद्ध छन् । यो त साह्रै आश्चर्य लाग्दो कुरा हो ।

قَالُوْٓا اَتَعْجَبِيْنَ مِنْ اَمْرِ اللّٰهِ رَحْمَتُ اللّٰهِ وَبَرَكٰتُهٗ عَلَيْكُمْ اَهْلَ الْبَيْتِ ۗ اِنَّهٗ حَمِيْدٌ مَّجِيْدٌ ﴿٧٣﴾

७३) तिनीहरूले भने:, "के तिमीलाई अल्लाहको इच्छामा आश्चर्य लाग्दछ ?" हे यस घरका मानिसहरू ! तिमीमाथि अल्लाहको कृपा र उसका वरदानहरू छन् । त्यो प्रशंसाको योग्य र गौरवपूर्ण छ ।

فَلَمَّا ذَهَبَ عَنْ اِبْرٰهِيْمَ الرَّوْعُ وَجَآءَتْهُ الْبُشْرٰى يُجَادِلُنَا فِيْ قَوْمِ لُوْطٍ ﴿٧٤﴾

७४) जब इब्राहीमको हृदयबाट डर समाप्त भयो र उनलाई शुभ सन्देश पनि प्राप्त भइहाल्यो त "लूतको" कौमको बारेमा हामीसित कुराकानी गर्न थाले ।

اِنَّ اِبْرٰهِيْمَ لَحَلِيْمٌ اَوَّاهٌ مُّنِيْبٌ ﴿٧٥﴾

७५) नि:सन्देह इब्राहीम निकै धैर्यधारी, दयावान र (अल्लाह तर्फ) अति झुक्नेवाला थिए ।

يٰٓاِبْرٰهِيْمُ اَعْرِضْ عَنْ هٰذَا ۚ اِنَّهٗ قَدْ جَآءَ اَمْرُ رَبِّكَ ۚ وَاِنَّهُمْ اٰتِيْهِمْ عَذَابٌ غَيْرُ مَرْدُوْدٍ ﴿٧٦﴾

७६) हे इब्राहीम यस कुरामा नलाग । तिम्रो पालनकर्ताको आदेश आइपुगेको छ । र नि:सन्देह तिनीहरूमाथि न हर्ने दण्ड आउनेछ ।

وَلَمَّا جَآءَتْ رُسُلُنَا لُوْطًا سِيْٓءَ بِهِمْ وَضَاقَ بِهِمْ ذَرْعًا وَّقَالَ هٰذَا يَوْمٌ عَصِيْبٌ ﴿٧٧﴾

७७) जब हाम्रा फरिश्ताहरू (स्वर्गदूत) "लूतको" छेउमा पुगे त उनी त्यसबाट धेरै दु:खी भए र मनैमनमा असजिलो मान्दै भन्न थाले कि आजको दिन बडो गाह्रो दिन छ ।

وَجَآءَهٗ قَوْمُهٗ يُهْرَعُوْنَ اِلَيْهِ ۗ وَمِنْ قَبْلُ كَانُوْا يَعْمَلُوْنَ السَّيِّاٰتِ ۗ قَالَ يٰقَوْمِ هٰٓؤُلَآءِ بَنَاتِيْ هُنَّ اَطْهَرُ لَكُمْ فَاتَّقُوا اللّٰهَ وَلَا تُخْزُوْنِ فِيْ ضَيْفِيْ ۗ اَلَيْسَ مِنْكُمْ رَجُلٌ رَّشِيْدٌ ﴿٧٨﴾

७८) र लूतको कौमका मानिसहरू उनीतर्फ दौडेर आए । र यिनीहरू अघि देखिनै अश्लीलकर्म गर्ने गर्थे । लूतले भने: "कि हे मेरो

कौमका मानिसहरू यी मेरो छोरीहरू हुन् जो तिम्रा निम्ति पवित्र छिन्, तसर्थ अल्लाहसित डर र मेरा पाहुनाहरूकोबारेमा मलाई अपमानित नगर । के तिमीहरूमध्ये कोही पनि भलो मान्छे छैन ?

७९) तिनीहरूले भनेः, "तिमीलाई राम्ररी थाहा छ कि हामीलाई तिम्रो छोरीहरूको कुनै हक-अधिकार छैन, र जुन हाम्रो वास्तविक उद्देश्य छ त्यो सित तिमी राम्ररी अवगत छौ ।"

قَالُوا لَقَدْ عَلِمْتَ مَا لَنَا فِي بَنَاتِكَ مِنْ حَقٍّ ۚ وَإِنَّكَ لَتَعْلَمُ مَا نُرِيدُ ﴿٧٩﴾

८०) लूतले भनेः काश ! ममा तिमीसँग मुकाबिला गर्ने शक्ति भइदिए अथवा मैले कुनै बलियोको शरणमा भइदिएको भए (राम्रो हुने थियो) ।

قَالَ لَوْ أَنَّ لِي بِكُمْ قُوَّةً أَوْ آوِي إِلَىٰ رُكْنٍ شَدِيدٍ ﴿٨٠﴾

८१) अब फरिश्ताहरूले भनेः "हे लूत ! हामी तिम्रा पालनकर्ताले पठाएका फरिश्ताहरू हौं । यी मानिसहरू कहिल्यै पनि तिम्रो समीपमा पुग्न सक्ने छैनन्, तसर्थ रातको केही भाग बाँकी रहँदा तिम्रो स्वास्नी बाहेक, आफ्ना घरवालालाई लिएर बाहिर निस्किहाल, र तिमीमध्ये कुनै पनि व्यक्तिले, पछाडितिर नहेर्नु । किन भने यसलाई पनि त्यही आउने वाला छ जो यी सबैसम्म पुग्ने छ । यिनको (अजाबको) निर्धारित समय प्रातः हो र के प्रातः नजिक छैन ?"

قَالُوا يَا لُوطُ إِنَّا رُسُلُ رَبِّكَ لَنْ يَصِلُوا إِلَيْكَ ۖ فَأَسْرِ بِأَهْلِكَ بِقِطْعٍ مِنَ اللَّيْلِ وَلَا يَلْتَفِتْ مِنْكُمْ أَحَدٌ إِلَّا امْرَأَتَكَ ۖ إِنَّهُ مُصِيبُهَا مَا أَصَابَهُمْ ۚ إِنَّ مَوْعِدَهُمُ الصُّبْحُ ۚ أَلَيْسَ الصُّبْحُ بِقَرِيبٍ ﴿٨١﴾

८२) तसर्थ जब हाम्रो आदेश आयो, त हामीले त्यस बस्तीलाई, माथिको भाग तल गरिदियौ, र तिनीहरूमाथि पत्र-पत्र गरी ढुङ्गा बर्सायौं ।

فَلَمَّا جَآءَ اَمْرُنَا جَعَلْنَا عَالِيَهَا سَافِلَهَا وَاَمْطَرْنَا عَلَيْهَا حِجَارَةً مِّنْ سِجِّيْلٍ ۙ مَّنْضُوْدٍ ۙ﴿۸۲﴾

८३) ती सबै ढुङ्गामाथि तिम्रो पालनकर्ताको तर्फबाट निशान लगाइएको थियो र त्यो (शहर मक्काको) अत्याचारीहरूबाट केही टाढा पनि छैन ।

مُّسَوَّمَةً عِنْدَ رَبِّكَ ؕ وَمَا هِيَ مِنَ الظّٰلِمِيْنَ بِبَعِيْدٍ ۧ﴿۸۳﴾

८४) र मदयनतिर उनका भाइ "शुऐबलाई" पठायौं, त उनले भनेः "हे मेरो समुदाय ! अल्लाह कै उपासना गर, उस बाहेक अरु कोही सत्य पूजनीय छैन । र नाप तौलमा पनि कमी नगर । मैले त तिमीलाई समृद्ध देख्दछु र मलाई तिम्रो बारेमा एउटा यस्तो दिनको सजायको भय छ जुन तिमीलाई आएर घेरि हाल्छ ।"

وَاِلٰى مَدْيَنَ اَخَاهُمْ شُعَيْبًا ؕ قَالَ يٰقَوْمِ اعْبُدُوا اللّٰهَ مَا لَكُمْ مِّنْ اِلٰهٍ غَيْرُهٗ ؕ وَلَا تَنْقُصُوا الْمِكْيَالَ وَالْمِيْزَانَ اِنِّيْۤ اَرٰىكُمْ بِخَيْرٍ وَّاِنِّيْۤ اَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ مُّحِيْطٍ ﴿۸۴﴾

८५) र हे मेरो कौम ! नाप र तौल न्यायपूर्ण रूपले गर्दैगर र मानिसहरूलाई तिनीहरूको कुराहरूमा कमी नगर र पृथ्वीमा उपद्रव र उत्पात नमचाऊ ।

وَيٰقَوْمِ اَوْفُوا الْمِكْيَالَ وَالْمِيْزَانَ بِالْقِسْطِ وَلَا تَبْخَسُوا النَّاسَ اَشْيَآءَهُمْ وَلَا تَعْثَوْا فِى الْاَرْضِ مُفْسِدِيْنَ ﴿۸۵﴾

८६) अल्लाहद्धारा हलाल भनिएको जे छ तिम्रो लागि धेरै राम्रो छ, यदि तिमी ईमान वाला हौ । र म तिमीमाथि संरक्षक होइन ।

بَقِيَّتُ اللّٰهِ خَيْرٌ لَّكُمْ اِنْ كُنْتُمْ مُّؤْمِنِيْنَ ۚ وَمَاۤ اَنَا عَلَيْكُمْ بِحَفِيْظٍ ﴿۸۶﴾

८७) तिनीहरूले जवाफ दिए हे शुऐब ! "के तिम्रो नमाजले तिमीलाई यो आदेश दिन्छ कि जसलाई हाम्रा

قَالُوْا يٰشُعَيْبُ اَصَلٰوتُكَ تَاْمُرُكَ اَنْ نَّتْرُكَ مَا يَعْبُدُ اٰبَآؤُنَاۤ اَوْ اَنْ نَّفْعَلَ فِيْۤ اَمْوَالِنَا مَا نَشٰٓؤُا ؕ اِنَّكَ لَاَنْتَ الْحَلِيْمُ الرَّشِيْدُ ﴿۸۷﴾

पूर्वजहरूले पूज्दै आएका छन्, हामीले तिनलाई छोड्दिऔं, र आफ्नो सम्पत्तिबाट जुन काम हामी लिन चाहन्छौ त्यो गर्न पनि छाँडी देऔं । तिमी त साह्रै कोमल हृदयका र सत्यनिष्ठ मानिस हौ ।''

قَالَ يٰقَوْمِ اَرَءَيْتُمْ اِنْ كُنْتُ عَلٰى بَيِّنَةٍ مِّنْ رَّبِّىْ وَرَزَقَنِىْ مِنْهُ رِزْقًا حَسَنًا ؕ وَمَآ اُرِيْدُ اَنْ اُخَالِفَكُمْ اِلٰى مَآ اَنْهٰىكُمْ عَنْهُ ؕ اِنْ اُرِيْدُ اِلَّا الْاِصْلَاحَ مَا اسْتَطَعْتُ ؕ وَمَا تَوْفِيْقِىْٓ اِلَّا بِاللّٰهِ ؕ عَلَيْهِ تَوَكَّلْتُ وَاِلَيْهِ اُنِيْبُ ﴿٨٨﴾

८८) उनले भने: ''कि हे मेरो कौम ! हेर, त यदि मसँग आफ्नो पालनकर्ताबाट स्पष्ट प्रमाण प्राप्त छ भने, र उसले मलाई आफ्नो तर्फबाट पवित्र जीविका दिएको छ । र म चाहन्न कि जुन कुरोबाट तिमीलाई मनाही गर्छु स्वयम् मैले नै त्यो गर्न थालूँ । मत जहाँसम्म हुनसक्छ (तिम्रो) सुधार चाहन्छु । र मेरो क्षमता अल्लाहकै कृपाले छ । म उसैमाथि भरोसा राख्दछु र उसैतिर प्रवृत्त हुन्छु ।''

وَيٰقَوْمِ لَا يَجْرِمَنَّكُمْ شِقَاقِىْٓ اَنْ يُّصِيْبَكُمْ مِّثْلُ مَآ اَصَابَ قَوْمَ نُوْحٍ اَوْ قَوْمَ هُوْدٍ اَوْ قَوْمَ صٰلِحٍ ؕ وَمَا قَوْمُ لُوْطٍ مِّنْكُمْ بِبَعِيْدٍ ﴿٨٩﴾

८९) र हे मेरो कौमका मानिसहरू कतै ! मेरो विरोध तिमीलाई त्यस्तो सजायको हकदार नबनाओस् जुन नूहकोकौम वा हूदको कौम वा सालेहको कौमलाई भएको थियो । र लूतको कौम त तिमीबाट केही टाढा छैन ।

وَاسْتَغْفِرُوْا رَبَّكُمْ ثُمَّ تُوْبُوْٓا اِلَيْهِ ؕ اِنَّ رَبِّىْ رَحِيْمٌ وَّدُوْدٌ ﴿٩٠﴾

९०) तिमी आफ्नो पालनकर्तासित क्षमा माँग र उसको अगाडि प्रायश्चित गर । निश्चितरूपमा मेरो पालनकर्ता दयावान (र) माया गर्नेवाला छ ।

قَالُوْا يٰشُعَيْبُ مَا نَفْقَهُ كَثِيْرًا مِّمَّا تَقُوْلُ وَاِنَّا لَنَرٰىكَ فِيْنَا ضَعِيْفًا ۚ وَلَوْلَا رَهْطُكَ لَرَجَمْنٰكَ ؗ وَمَآ اَنْتَ عَلَيْنَا بِعَزِيْزٍ ﴿٩١﴾

९१) तिनीहरूले भने: हे शुऐब ! तिम्रा धेरै जसो कुराहरू हामीले बुझ्दैनौं र हामीले देख्दछौ तिमी धेरै कमजोर पनि छौ, र यदि तिम्रा खानदानको ख्याल नभएको भए हामीले तिमीलाई ढुङ्गा हानेर खतम पारिदिन्थ्यौं, र तिमीलाई हामीविरुद्ध शक्ति पनि छैन ।

قَالَ يٰقَوْمِ اَرَهْطِيْٓ اَعَزُّ عَلَيْكُمْ مِّنَ اللّٰهِ ؕ وَاتَّخَذْتُمُوْهُ وَرَآءَكُمْ ظِهْرِيًّا ؕ اِنَّ رَبِّيْ بِمَا تَعْمَلُوْنَ مُحِيْطٌ ﴿٩٢﴾

९२) उनले भने: कि "हे मेरो क़ौमका मानिसहरू ! के मेरा दाजुभाइहरूको सम्मान तिम्रो लागि अल्लाहभन्दा धेरै छ । र यसकारण तिमीले उसलाई आफ्नो पछाडि राखेका छौ । निःसन्देह मेरो पालनकर्ताले त तिम्रा सम्पूर्ण क्रियाकलापलाई घेरेको छ ।"

وَيٰقَوْمِ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ اِنِّيْ عَامِلٌ ؕ سَوْفَ تَعْلَمُوْنَ ۙ مَنْ يَّاْتِيْهِ عَذَابٌ يُّخْزِيْهِ وَمَنْ هُوَ كَاذِبٌ ؕ وَارْتَقِبُوْٓا اِنِّيْ مَعَكُمْ رَقِيْبٌ ﴿٩٣﴾

९३) र हे मेरो कौमका मानिसहरू तिमी आफ्नो ठाउँमा काम गर्दै जाऊ, म (आफ्नो ठाउँमा) गर्दै जान्छु । तिमीलाई छिट्टै थाहा भइहाल्ने छ कि तिरस्कारपूर्ण सजाय कसमाथि आउँछ र झूठा को छ ? तिमी प्रतिक्षा गर, म पनि तिम्रो साथमा प्रतिक्षा गर्छु ।

وَلَمَّا جَآءَ اَمْرُنَا نَجَّيْنَا شُعَيْبًا وَّالَّذِيْنَ اٰمَنُوْا مَعَهٗ بِرَحْمَةٍ مِّنَّا وَاَخَذَتِ الَّذِيْنَ ظَلَمُوا الصَّيْحَةُ فَاَصْبَحُوْا فِيْ دِيَارِهِمْ جٰثِمِيْنَ ﴿٩٤﴾

९४) र जब हाम्रो सजाय आईपुग्यो, त हामीले "शुऐबलाई" र ती मानिसहरू जसले उनको साथमा ईमान लाएका थिए, आफ्नो कृपाले बचाइहाल्यौं र जो अत्याचारी थिए तिनलाई

प्रचन्ड विस्फोटनले आफ्नो चपेटामा लिइहाल्यो, जसले गर्दा तिनीहरू आफ्नो घरमा लम्पसार परिहाले ।

كَأَنْ لَّمْ يَغْنَوْا فِيهَا ۗ أَلَا بُعْدًا لِّمَدْيَنَ كَمَا بَعِدَتْ ثَمُودُ ﴿٩٥﴾

९५) यस्तो कि त्यसमा कहिल्यै बसेकै थिएनन् । जानीराखः कि "मदयन" माथि त्यस्तै तिरस्कार छ, जुन प्रकारको तिरस्कार "समूद" माथि थियो ।

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا وَسُلْطَانٍ مُّبِينٍ ﴿٩٦﴾

९६) र निःसन्देह हामीले मूसालाई आफ्ना निशानीहरू र स्पष्ट प्रमाण दिएर पठाएका थियौं ।

إِلَىٰ فِرْعَوْنَ وَمَلَئِهِ فَاتَّبَعُوا أَمْرَ فِرْعَوْنَ ۖ وَمَا أَمْرُ فِرْعَوْنَ بِرَشِيدٍ ﴿٩٧﴾

९७) फिरऔन र उसका नायकहरूतिर, तर तिनीहरूले फिरऔनकै आदेशलाई माने, र फिरऔनको कुनै आदेश ठीक थिएन ।

يَقْدُمُ قَوْمَهُ يَوْمَ الْقِيَامَةِ فَأَوْرَدَهُمُ النَّارَ ۖ وَبِئْسَ الْوِرْدُ الْمَوْرُودُ ﴿٩٨﴾

९८) उसले कियामतको दिन आफ्नो कौमको अघि-अघि हिंडेर तिनीहरूलाई नर्कमा लग्नेछ, र जुन ठाउँमा तिनीहरू लगिनेछन् त्यो अत्यन्तै नराम्रो छ ।

وَأُتْبِعُوا فِي هَٰذِهِ لَعْنَةً وَيَوْمَ الْقِيَامَةِ ۚ بِئْسَ الرِّفْدُ الْمَرْفُودُ ﴿٩٩﴾

९९) यिनीहरूलाई त यस संसारमा पनि तिरस्कार छ, र कियामतको दिन पनि । उनलाई नराम्रो पुरस्कार प्राप्त हुनेछ ।

ذَٰلِكَ مِنْ أَنبَاءِ الْقُرَىٰ نَقُصُّهُ عَلَيْكَ ۖ مِنْهَا قَائِمٌ وَحَصِيدٌ ﴿١٠٠﴾

१००) यी (पुराना) बस्तीहरूका संक्षिप्त वर्णनहरू हुन्, जुन हामीले तिमीसित वर्णन गर्दछौं यी मध्ये केही बाँकी छन् र केही तहस-नहस भइहाले ।

وَمَا ظَلَمْنٰهُمْ وَلٰكِنْ ظَلَمُوْٓا اَنْفُسَهُمْ فَمَآ اَغْنَتْ عَنْهُمْ اٰلِهَتُهُمُ الَّتِيْ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ مِنْ شَيْءٍ لَّمَّا جَآءَ اَمْرُ رَبِّكَ ۭ وَمَا زَادُوْهُمْ غَيْرَ تَتْبِيْبٍ ۝١٠١

१०१) र हामीले तिनीहरू माथि कुनै अत्याचार गरेका होइनौं बरु तिनीहरूले आफैमाथि अत्याचार गरेका हुन्, जब तिम्रो पालनकर्ताको आदेश आइपुग्यो त जुन देवताहरूलाई तिनीहरूले अल्लाह बाहेक पुकार्दथे तिनीहरू उनीहरूको कुनै पनि काम आएनन् । अपितु उनीहरूको नोक्सानी नै बढाई दिए ।

وَكَذٰلِكَ اَخْذُ رَبِّكَ اِذَآ اَخَذَ الْقُرٰى وَهِيَ ظَالِمَةٌ ۭ اِنَّ اَخْذَهٗٓ اَلِيْمٌ شَدِيْدٌ ۝١٠٢

१०२) तिम्रो पालनकर्ताले जब उल्लंघन गर्ने बस्तीहरूलाई समात्छ त उसको पकड यसै प्रकारको हुन्छ । निःसन्देह उसको पकड कष्टदायक (र) कठिन छ ।

اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّمَنْ خَافَ عَذَابَ الْاٰخِرَةِ ۭ ذٰلِكَ يَوْمٌ مَّجْمُوْعٌ ۙ لَّهُ النَّاسُ وَذٰلِكَ يَوْمٌ مَّشْهُوْدٌ ۝١٠٣

१०३) निःसन्देह यसमा ती व्यक्तिहरूको निम्ति, जो कि आखिरतको दिन सजायसित डराउँछन् एउटा पाठ हो । यो त्यो दिन हुनेछ जसमा सबै मानिसहरू एकत्रित गरिनेछन् र यहि त्यो दिन हुनेछ जसमा सबै (हिसाब-किताबको लागी) उपस्थित गरिनेछन् ।

وَمَا نُؤَخِّرُهٗٓ اِلَّا لِاَجَلٍ مَّعْدُوْدٍ ۝١٠٤

१०४) र हामीले त्यसलाई ल्याउनमा निर्धारित समयसम्म विलम्ब गरिराखेका छौ ।

يَوْمَ يَاْتِ لَا تَكَلَّمُ نَفْسٌ اِلَّا بِاِذْنِهٖ ۚ فَمِنْهُمْ شَقِيٌّ وَّسَعِيْدٌ ۝١٠٥

१०५) जुन समय त्यो दिन आउनेछ, कुनै व्यक्ति अल्लाहको आदेशबिना बोल्न पनि सक्ने छैन । अनि तिनीहरूमा केही अभागी हुनेछन् र केही भाग्यमान ।

فَأَمَّا الَّذِينَ شَقُوا فَفِي النَّارِ لَهُمْ فِيهَا زَفِيرٌ وَشَهِيقٌ ﴿١٠٦﴾

१०६) त जो अभागी हुनेछन् तिनीहरू नर्कमा हालिनेछन् त्यसमा उनीहरू विलाप गर्ने छन् र कराउन्छन् ।

خَالِدِينَ فِيهَا مَا دَامَتِ السَّمَاوَاتُ وَالْأَرْضُ إِلَّا مَا شَاءَ رَبُّكَ ۚ إِنَّ رَبَّكَ فَعَّالٌ لِمَا يُرِيدُ ﴿١٠٧﴾

१०७) (र) जबसम्म आकाश र पृथ्वी छन् तिनीहरू सधैं त्यसमा रहनेछन् तर जति तिम्रो पालनकर्ताले चाहन्छ त्यति बाहेक । निःसन्देह तिम्रो पालनकर्ताले जे चाहन्छ त्यो गरिहाल्छ ।

وَأَمَّا الَّذِينَ سُعِدُوا فَفِي الْجَنَّةِ خَالِدِينَ فِيهَا مَا دَامَتِ السَّمَاوَاتُ وَالْأَرْضُ إِلَّا مَا شَاءَ رَبُّكَ ۖ عَطَاءً غَيْرَ مَجْذُوذٍ ﴿١٠٨﴾

१०८) र जो वरदान प्राप्त हुनेछन्, तिनीहरू स्वर्गमा हुने छन् जबसम्म आकाश र पृथ्वी छन् सधैं यसैमा रहनेछन्, तर जति तिम्रो पालनकर्ताको इच्छा हुन्छ । यो पुरस्कार हो जुनकि कहिल्यै समाप्त हुनेछैन ।

فَلَا تَكُ فِي مِرْيَةٍ مِمَّا يَعْبُدُ هَٰؤُلَاءِ ۚ مَا يَعْبُدُونَ إِلَّا كَمَا يَعْبُدُ آبَاؤُهُمْ مِنْ قَبْلُ ۚ وَإِنَّا لَمُوَفُّوهُمْ نَصِيبَهُمْ غَيْرَ مَنْقُوصٍ ﴿١٠٩﴾

१०९) यसर्थ तपाई यस्ता कुराहरूबाट कुनै शंकामा नपर्नुस यी मानिसहरू जसको पूजा गर्दछन्, यिनीहरूले यसै प्रकारले पूजा गर्दछन्, जुन प्रकारले पहिला यिनका पूर्वजहरूले गर्दै आएका छन् । र हामी तिनीहरूलाई तिनीहरूको भाग पूर्ण रूपले केही नघटाई नबढाई दिनेवाला छौं ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ فَاخْتُلِفَ فِيهِ ۚ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَبِّكَ لَقُضِيَ بَيْنَهُمْ ۚ وَإِنَّهُمْ لَفِي شَكٍّ مِنْهُ مُرِيبٍ ﴿١١٠﴾

११०) र निःसन्देह हामीले मूसालाई किताब प्रदान गऱ्यौ, तब त्यसमा विवाद गरियो र यदि तिम्रो पालनकर्ताको तर्फबाट एउटा कुरा अघिनै नभइसकेको भए तिनीहरूको बीचमा नै निर्णय गरिहालिन्थ्यो र तिनीहरू त यसमा ठूलो शंकामा परेका छन् ।

१११) निःसन्देह प्रत्येकले जब उनका सामु जानेछ तब तपाईको पालनकर्ताले सबैलाई तिनीहरूको क्रियाकलापको पूरा-पूरा प्रतिफल दिनेछ । निःसन्देह जुन क्रियाकलाप यिनले गर्दछन् ऊ त्यसलाई जान्दछ ।

وَإِنَّ كُلًّا لَّمَّا لَيُوَفِّيَنَّهُمْ رَبُّكَ أَعْمَالَهُمْ ۚ إِنَّهُ بِمَا يَعْمَلُونَ خَبِيرٌ ﴿١١١﴾

११२) तसर्थ (हे पैगम्बर !) तपाईलाई जस्तो आदेश दिइएकोछ तपाई र तपाईका साथ प्रायश्चित गरिसकेका मानिसहरूले दृढ रहनु, र सीमा भन्दा अगाडि नजाऊ । उसले तिम्रा सारा क्रियाकलाप देखिराखेको छ ।

فَاسْتَقِمْ كَمَا أُمِرْتَ وَمَن تَابَ مَعَكَ وَلَا تَطْغَوْا ۚ إِنَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١٢﴾

११३) हेर जो अत्याचारीहरू छन् उनीहरूतिर कदापि प्रवृत्त नहोऊ, नत्र नर्कको आगोले तिमीलाई पनि समाती हाल्छ, र अल्लाह बाहेक तिम्रो कोही संरक्षक छैन र कोहीबाट मद्दत प्राप्त हुनसक्ने छैन ।

وَلَا تَرْكَنُوا إِلَى الَّذِينَ ظَلَمُوا فَتَمَسَّكُمُ النَّارُ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِنْ أَوْلِيَاءَ ثُمَّ لَا تُنصَرُونَ ﴿١١٣﴾

११४) दिनको दुवै भागमा (प्रातः र सन्ध्या) नमाज़ पढ्ने गर, र रातीको केही बेलामा पनि । निःसन्देह सत्य कर्महरूले गुनाहहरूलाई खतम पारिदिन्छन् । यो तिनीहरूको निम्ति पाठ हो जो पाठ स्वीकार गर्नेवाला छन् ।

وَأَقِمِ الصَّلَاةَ طَرَفَيِ النَّهَارِ وَزُلَفًا مِّنَ اللَّيْلِ ۚ إِنَّ الْحَسَنَاتِ يُذْهِبْنَ السَّيِّئَاتِ ۚ ذَٰلِكَ ذِكْرَىٰ لِلذَّاكِرِينَ ﴿١١٤﴾

११५) तपाईले धैर्यधारण गरिराख्नुस् निश्चय अल्लाह सत्कर्मीहरूको प्रतिफल खेर फाल्दैन ।

وَاصْبِرْ فَإِنَّ اللَّهَ لَا يُضِيعُ أَجْرَ الْمُحْسِنِينَ ﴿١١٥﴾

११६) तसर्थ जो क़ौम तिमी भन्दा अघि

فَلَوْلَا كَانَ مِنَ الْقُرُونِ مِن قَبْلِكُمْ أُولُو بَقِيَّةٍ

يَّنْهَوْنَ عَنِ الْفَسَادِ فِي الْأَرْضِ إِلَّا قَلِيلًا مِّمَّنْ أَنجَيْنَا مِنْهُمْ ۗ وَاتَّبَعَ الَّذِينَ ظَلَمُوا مَا أُتْرِفُوا فِيهِ وَكَانُوا مُجْرِمِينَ ﴿١١٦﴾

बितिसकेका छन्, तिनीहरूमा यस्ता बुद्धिमानी किन भएनन्, जसले कि मुलुकमा उपद्रव हुनबाट रोक्दथे, हो, केही (थिए), जसलाई हामीले तिनीहरू मध्येबाट बचायौं र जो अत्याचारी थिए, यिनै कुराको पछाडि लागिरहे, जसमा कि तिनीहरूलाई आनन्द र विलासिता दिइएको थियो, र तिनीहरू अपराधी थिए ।

وَمَا كَانَ رَبُّكَ لِيُهْلِكَ الْقُرَىٰ بِظُلْمٍ وَأَهْلُهَا مُصْلِحُونَ ﴿١١٧﴾

११७) र तिम्रो पालनकर्ता यस्तो छैन कि, कुनै बस्तीहरूलाई अकारण नष्ट गरिहालोस्, जब कि त्यहाँका बासिन्दाहरू सुकर्ममा लागी रहुन् ।

وَلَوْ شَاءَ رَبُّكَ لَجَعَلَ النَّاسَ أُمَّةً وَاحِدَةً ۖ وَلَا يَزَالُونَ مُخْتَلِفِينَ ﴿١١٨﴾

११८) यदि तिम्रो पालनकर्ताले चाहेको भए थुप्रै मानिसहरूलाई एउटै बाटोमा एउटै समूह बनाउने थियो तर तिनीहरूले सँधै विवाद गरिराख्ने नै छन् ।

إِلَّا مَن رَّحِمَ رَبُّكَ ۚ وَلِذَٰلِكَ خَلَقَهُمْ ۗ وَتَمَّتْ كَلِمَةُ رَبِّكَ لَأَمْلَأَنَّ جَهَنَّمَ مِنَ الْجِنَّةِ وَالنَّاسِ أَجْمَعِينَ ﴿١١٩﴾

११९) तर ती बाहेक जसमाथि तपाईको पालनकर्ताले कृपा गरोस् र यसैले उसले यिनीहरूलाई सृष्टि गरेको छ, र तिम्रो पालनकर्ताको यो वचन पूरा भइसकेको छ, कि म नर्कलाई जिन्न र मानिसहरूबाट भरिदिनेछु ।

وَكُلًّا نَّقُصُّ عَلَيْكَ مِنْ أَنبَاءِ الرُّسُلِ مَا نُثَبِّتُ بِهِ فُؤَادَكَ ۚ وَجَاءَكَ فِي هَٰذِهِ الْحَقُّ وَمَوْعِظَةٌ وَذِكْرَىٰ لِلْمُؤْمِنِينَ ﴿١٢٠﴾

१२०) हे (मुहम्मद स.अ. !) पैगम्बरहरूका ती सबै कुराहरू हामीले तपाई सामु तपाईको मनको शाँतिको लागि वर्णन गर्दछौं, तपाईसम्म यो सूरः (अंश) मा पनि सत्य पुगिसक्यो जुन

मोमिनहरूको निम्ति उपदेश र पाठ हो ।

وَقُلْ لِّلَّذِيْنَ لَا يُؤْمِنُوْنَ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ ۗ اِنَّا عٰمِلُوْنَ ﴿١٢١﴾

१२१) र जुन मानिसहरूले ईमान ल्याएका छैनन्, तिनीहरूलाई भनिदिनुस् कि तिमी आफ्नो ठाउँमा कर्म गर्दै जाऊ, हामी आफ्नो ठाउँमा गर्ने गर्दछौं ।

وَانْتَظِرُوْا ۚ اِنَّا مُنْتَظِرُوْنَ ﴿١٢٢﴾

१२२) र तिमी पनि प्रतिक्षा गर, हामी पनि प्रतिक्षा गर्दछौं ।

وَلِلّٰهِ غَيْبُ السَّمٰوٰتِ وَالْاَرْضِ وَاِلَيْهِ يُرْجَعُ الْاَمْرُ كُلُّهٗ فَاعْبُدْهُ وَتَوَكَّلْ عَلَيْهِ ؕ وَمَا رَبُّكَ بِغَافِلٍ عَمَّا تَعْمَلُوْنَ ﴿١٢٣﴾

१२३) आकाशहरू र पृथ्वीमा अदृश्य कुराहरूको ज्ञान अल्लाहलाई नै छ, र थुप्रै कुराहरू उसैतिर निर्णयको लागि फर्कन्छन् तसर्थ उसैको पूजा गर, र उसैमाथि भरोसा राख, र जे जति तिमीले गरिराखेका छौ तिम्रो पालनकर्ता त्यसबाट अनभिज्ञ छैन ।



# सूरतु यूसुफ-१२




सूरतु यूसुफ मक्की हो र यसमा १११ आयत र १२ रुकूअ्हरू छन् ।

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र ठूलो कृपालु छ ।**

الٓرٰ تِلۡكَ اٰيٰتُ الۡكِتٰبِ الۡمُبِيۡنِ ۟ ﴿۱﴾

१) अलिफ-लाम-रा, यो स्पष्ट ग्रन्थका आयतहरू हुन् ।

اِنَّاۤ اَنۡزَلۡنٰهُ قُرۡءٰنًا عَرَبِيًّا لَّعَلَّكُمۡ تَعۡقِلُوۡنَ ﴿۲﴾

२) निःसन्देह हामीले यस कुरआनलाई अरबीमा उतारेका छौं ताकि तिमीले बुझ्न सक ।

نَحۡنُ نَقُصُّ عَلَيۡكَ اَحۡسَنَ الۡقَصَصِ بِمَاۤ اَوۡحَيۡنَاۤ اِلَيۡكَ هٰذَا الۡقُرۡاٰنَ ۖ وَاِنۡ كُنۡتَ مِنۡ قَبۡلِهٖ لَمِنَ الۡغٰفِلِيۡنَ ﴿۳﴾

३) हामी तपाई सामु सर्वोत्कृष्ट बृतान्त प्रस्तुत गर्दछौं, यस कारण कि हामीले तपाई तिर यो कुरआन वह्यको माध्यमबाट उतारेकाछौं र निःसन्देह यस भन्दा अगाडि तपाई अज्ञानहरू मध्येका हुनु हुन्थ्यो ।

اِذۡ قَالَ يُوۡسُفُ لِاَبِيۡهِ يٰۤاَبَتِ اِنِّىۡ رَاَيۡتُ اَحَدَ عَشَرَ كَوۡكَبًا وَّالشَّمۡسَ وَالۡقَمَرَ رَاَيۡتُهُمۡ لِىۡ سٰجِدِيۡنَ ﴿۴﴾

४) जब यूसुफले आफ्ना पितासँग भने कि बुबा ! मैले (सपनामा) एघार ताराहरू, र सूर्य र चन्द्र देखेको छु कि तिनीहरूले मलाई ढोगिराखेका छन् ।

قَالَ يٰبُنَىَّ لَا تَقۡصُصۡ رُءۡيَاكَ عَلٰۤى اِخۡوَتِكَ فَيَكِيۡدُوۡا لَكَ كَيۡدًا ؕ اِنَّ الشَّيۡطٰنَ لِلۡاِنۡسَانِ عَدُوٌّ مُّبِيۡنٌ ﴿۵﴾

५) याकूबले भने प्यारो छोरो ! आफ्नो यस सपनाको चर्चा आफ्ना दाजुभाइहरूसँग नगर्नु, नत्र तिनीहरू तिम्रो लागि षड्यन्त्रपूर्ण चाल चल्नेछन् । कुनै सन्देह छैन कि शैतान मानिसको स्पष्ट रूपमा शत्रु हो ।

६) र यसै प्रकार अल्लाहले तिमीलाई विशेष रूपमा रोज्नेछ, र सपनाको अर्थको ज्ञान गराउनेछ, र जुन किसिमले उसले आफ्नो वरदान अघि तिम्रा बाजे-बराजु, इब्राहीम तथा "इस्हाक" लाई प्रदान गरेको थियो, त्यसै प्रकारले तिमी माथि र याकूबको सन्ततिलाई पनि प्रदान गर्नेछ । निःसन्देह तिम्रो पालनकर्ता (सर्व) ज्ञाता र तत्वदर्शी छ ।

وَكَذٰلِكَ يَجْتَبِيْكَ رَبُّكَ وَيُعَلِّمُكَ مِنْ
تَأْوِيْلِ الْأَحَادِيْثِ وَيُتِمُّ نِعْمَتَهٗ عَلَيْكَ وَعَلٰٓى اٰلِ
يَعْقُوْبَ كَمَآ اَتَمَّهَا عَلٰٓى اَبَوَيْكَ مِنْ قَبْلُ
اِبْرٰهِيْمَ وَاِسْحٰقَ ۭ اِنَّ رَبَّكَ عَلِيْمٌ حَكِيْمٌ ۝۶

७) हो, यूसुफ र तिनका दाजुभाइहरूमा सोध गर्ने मानिसहरूका निम्ति धेरै निशानीहरू छन् ।

لَقَدْ كَانَ فِيْ يُوْسُفَ وَاِخْوَتِهٖٓ اٰيٰتٌ لِّلسَّاۗىِٕلِيْنَ ۝۷

८) जब तिनीहरूले (आपसमा) चर्चा गरेः कि यूसुफ र उनको भाइ पितालाई हामी भन्दा धेरै प्रिय छन् । हुन त हामीहरू शक्तिशाली जत्तथा छौं । निश्चय नै हाम्रा पिता ठूलो भ्रममा हुनुहुन्छ ।

اِذْ قَالُوْا لَيُوْسُفُ وَاَخُوْهُ اَحَبُّ اِلٰٓى اَبِيْنَا مِنَّا
وَنَحْنُ عُصْبَةٌ ۭ اِنَّ اَبَانَا لَفِيْ ضَلٰلٍ مُّبِيْنِۨ ۝۸

९) तसर्थ यूसुफलाई त मारिहाल वा कुनै अज्ञात ठाउँमा फालिहाल, जसबाट तिम्रो पिताज्यूको ध्यान मात्र तिमीतिर हुनेछ, र यस पश्चात तिमी राम्रो अवस्थामा भइहाल ।

اقْتُلُوْا يُوْسُفَ اَوِ اطْرَحُوْهُ اَرْضًا يَّخْلُ لَكُمْ وَجْهُ
اَبِيْكُمْ وَتَكُوْنُوْا مِنْۢ بَعْدِهٖ قَوْمًا صٰلِحِيْنَ ۝۹

१०) तिनीहरूमध्ये एउटाले भन्योः "कि यूसुफको ज्यान नमार, बरु गहिरो इनारमा फालिदेऊ यसरी कि कुनै बटुवाले निकालेर लैजाओस् । यदि तिमीले गर्नुछ भने यसरी नै गर ।"

قَالَ قَاۗىِٕلٌ مِّنْهُمْ لَا تَقْتُلُوْا يُوْسُفَ وَاَلْقُوْهُ فِيْ
غَيٰبَتِ الْجُبِّ يَلْتَقِطْهُ بَعْضُ السَّيَّارَةِ اِنْ كُنْتُمْ
فٰعِلِيْنَ ۝۱۰

११) भन्न थालेकिः "पिताज्यू ! के कारण छ कि हजुरले यूसुफको बारेमा हामीलाई विश्वासगर्नुहुन्न, जबकि हामी उसका शुभचिन्तक हौं ।"

قَالُوْا يٰٓاَبَانَا مَالَكَ لَا تَاْمَنَّا عَلٰى يُوْسُفَ وَاِنَّا لَهٗ لَنٰصِحُوْنَ ﴿١١﴾

१२) भोलि उसलाई खूबै आनन्द गर्न, खेल्न र खानपीन गर्न हाम्रो साथमा पठाइदिनुस् । हामी उसको सुरक्षाको जिम्मेवार छौं ।

اَرْسِلْهُ مَعَنَا غَدًا يَّرْتَعْ وَيَلْعَبْ وَاِنَّا لَهٗ لَحٰفِظُوْنَ ﴿١٢﴾

१३) याकूब (अ.)ले भनेः "कि यो कुरा मलाई दुःखी तुल्याइदिन्छ कि तिमीहरूले उसलाई लग, र मलाई यो पनि डर छ, कि तिम्रो असावधानीबाट उसलाई ब्वाँसोले खाइदिनेछ ।

قَالَ اِنِّيْ لَيَحْزُنُنِيْٓ اَنْ تَذْهَبُوْا بِهٖ وَاَخَافُ اَنْ يَّاْكُلَهُ الذِّئْبُ وَاَنْتُمْ عَنْهُ غٰفِلُوْنَ ﴿١٣﴾

१४) तिनीहरूले भने कि हाम्रो शक्तिशाली उपस्थितिमा पनि यदि उसलाई ब्वाँसोले खायो भने त हामी पूर्ण वेकम्मा हुनेछौं ।

قَالُوْا لَئِنْ اَكَلَهُ الذِّئْبُ وَنَحْنُ عُصْبَةٌ اِنَّآ اِذًا لَّخٰسِرُوْنَ ﴿١٤﴾

१५) फेरि जब तिनीहरूले उनलाई लगे, र सबै एकमत भए कि उनलाई एउटा एकान्तको गहिरो इनारमा हालि दियौ, त हामीले यूसुफ (अलै) तिर त्यही सन्देश पठायौं कि एक समय यस्तो आउँदैछ कि तिमीले तिनीहरूसित यसको बारेमा भन्नेछौ र तिनीहरूलाई तिम्रो बारेमा कुनै ज्ञान हुनेछैन ।

فَلَمَّا ذَهَبُوْا بِهٖ وَاَجْمَعُوْٓا اَنْ يَّجْعَلُوْهُ فِيْ غَيٰبَتِ الْجُبِّ ۚ وَاَوْحَيْنَآ اِلَيْهِ لَتُنَبِّئَنَّهُمْ بِاَمْرِهِمْ هٰذَا وَهُمْ لَا يَشْعُرُوْنَ ﴿١٥﴾

१६) तिनीहरू रातिको समयमा पिताको समीपमा रुँदै आए ।

وَجَآءُوْٓ اَبَاهُمْ عِشَآءً يَّبْكُوْنَ ﴿١٦﴾

قَالُوْا يٰٓاَبَانَآ اِنَّا ذَهَبْنَا نَسْتَبِقُ وَتَرَكْنَا يُوْسُفَ عِنْدَ مَتَاعِنَا فَاَكَلَهُ الذِّئْبُ ۚ وَمَآ اَنْتَ بِمُؤْمِنٍ لَّنَا وَلَوْ كُنَّا صٰدِقِيْنَ ﴿١٧﴾

१७) र भन्न थाले: "कि पिताज्यू ! हामी त परस्पर दगुर्नमा एक अर्कासित अगाडि हुनुमा लागिहाल्यौं, र यूसुफलाई आफ्नो सामानको नजिकमा छाड्दियौं, अनि ब्वाँसोले उसलाई खाइहाल्यो हाम्रो कुरालाई तपाईले पत्याउनुहुन्न, जबकि हामीले सत्य भनिराखेका छौं ।

وَجَآءُوْ عَلٰى قَمِيْصِهٖ بِدَمٍ كَذِبٍ ۗ قَالَ بَلْ سَوَّلَتْ لَكُمْ اَنْفُسُكُمْ اَمْرًا ۗ فَصَبْرٌ جَمِيْلٌ ۗ وَاللّٰهُ الْمُسْتَعَانُ عَلٰى مَا تَصِفُوْنَ ﴿١٨﴾

१८) र यूसुफको कमिजमा झूठा रगतको दागपनि लगाएर ल्याएका थिए । पिताले भने यो होइन, बरु तिमीहरू आफैंले मनगढन्ते कुरा बनाएर ल्याएका छौ । त राम्रो धैर्यनै उचित छ र जे तिमीले भनिराखेका छौ त्यस सम्बन्धमा अल्लाहबाट नै मद्दत चाहिन्छ ।

وَجَآءَتْ سَيَّارَةٌ فَاَرْسَلُوْا وَارِدَهُمْ فَاَدْلٰى دَلْوَهٗ ۗ قَالَ يٰبُشْرٰى هٰذَا غُلٰمٌ ۗ وَاَسَرُّوْهُ بِضَاعَةً ۗ وَاللّٰهُ عَلِيْمٌۢ بِمَا يَعْمَلُوْنَ ﴿١٩﴾

१९) एउटा यात्रुहरूको समूह आयो, र तिनीहरू पानी लिने मान्छे पठाए । त्यसले इनारमा बाल्टी हाल्यो र भन्यो आहा ! कति राम्रो भाग्य । यो त एउटा केटो रहेछ र त्यसलाई एउटा मूल्यवान सम्पत्ति ठानेर उनीहरूले लुकाइहाले र जेजति तिनीहरूले गर्दथे अल्लाहलाई सबै थाहा थियो ।

وَشَرَوْهُ بِثَمَنٍۢ بَخْسٍ دَرَاهِمَ مَعْدُوْدَةٍ ۚ وَكَانُوْا فِيْهِ مِنَ الزّٰهِدِيْنَ ﴿٢٠﴾

२०) र उसलाई उनीहरूले सानो मूल्यमा केही दिरहमहरूमा बेचीहाले, तिनीहरूको त यूसुफको बारेमा केही चाहना थिएन ।

२१) र मिस्रको जुन व्यक्तिले उनलाई किन्यो, त्यसले आफ्नो स्वास्नीसित, भन्यो कि यसलाई, आदर र सम्मानपूर्वक राख । धेरै संभव छ यसले हाम्रो भलो गरोस् अथवा हामीले यसलाई आफ्नो छोराको रूपमा स्वीकार गरिहालौं । यस प्रकार हामीले यूसुफलाई (मिस्रको) धर्तीमा स्थान प्रदान गर्‍यौं, र उद्देश्य यो थियो कि हामीले उनलाई सपनाका कुराहरूको अर्थ सिकाऔं । र अल्लाह आफ्नो काममा सर्वशक्ति सम्पन्न छ, तर धेरै मानिसहरू जान्दैनन् ।

وَقَالَ الَّذِي اشْتَرٰىهُ مِنْ مِّصْرَ لِامْرَاَتِهٖٓ اَكْرِمِيْ مَثْوٰىهُ عَسٰٓى اَنْ يَّنْفَعَنَآ اَوْ نَتَّخِذَهٗ وَلَدًا ۭ وَكَذٰلِكَ مَكَّنَّا لِيُوْسُفَ فِي الْاَرْضِ ۡ وَلِنُعَلِّمَهٗ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ ۭ وَاللّٰهُ غَالِبٌ عَلٰٓي اَمْرِهٖ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٢١﴾

२२) र जब उनले आफ्नो वयस्क अवस्था प्राप्त गरे, तब हामीले उनलाई शक्ति र ज्ञान प्रदान गर्‍यौ र असल कर्म गर्नेहरूलाई हामीले यस्तै किसिमले पुरस्कार प्रदान गर्ने गर्दछौं ।

وَلَمَّا بَلَغَ اَشُدَّهٗٓ اٰتَيْنٰهُ حُكْمًا وَّعِلْمًا ۭ وَكَذٰلِكَ نَجْزِي الْمُحْسِنِيْنَ ﴿٢٢﴾

२३) तर जुन स्त्रीको घरमा यूसुफ बस्दथे, उसले आफूतिर आकृष्ट गर्न खोजी र ढोका थुनि भन्न थाली (यूसुफ !) छिटो आऊ । उनले भने कि अल्लाहले, शरण प्रदान गरोस्, उही मेरो पालनकर्ता हो, उसले मलाई राम्ररी राखेका हुन् निःसन्देह अत्याचारी मानिसहरू कहिल्यै सफलता प्राप्त गर्दैनन् ।

وَرَاوَدَتْهُ الَّتِيْ هُوَ فِيْ بَيْتِهَا عَنْ نَّفْسِهٖ وَغَلَّقَتِ الْاَبْوَابَ وَقَالَتْ هَيْتَ لَكَ ۭ قَالَ مَعَاذَ اللّٰهِ اِنَّهٗ رَبِّيْٓ اَحْسَنَ مَثْوَايَ ۭ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٢٣﴾

२४) र त्यस स्त्रीले उत्सुकतापूर्वक उनको कामना गरी र उनले पनि त्यसको इच्छा गरिहाल्थे यदि उनले आफ्नो

وَلَقَدْ هَمَّتْ بِهٖ ۚ وَهَمَّ بِهَا لَوْلَآ اَنْ رَّاٰ بُرْهَانَ رَبِّهٖ ۭ كَذٰلِكَ لِنَصْرِفَ عَنْهُ السُّوْۗءَ وَالْفَحْشَاۗءَ ۭ اِنَّهٗ مِنْ عِبَادِنَا الْمُخْلَصِيْنَ ﴿٢٤﴾

पालनकर्ताको निशानी नदेखेको भए । यस्तो यसकारणले कि हामीले उनलाई नराम्रो र लज्जाजनक कुरोबाट टाडा राख्न सकौं । निःसन्देह ऊ हाम्रो विशिष्ट सेवकहरू मध्येको थियो ।

وَاسْتَبَقَا الْبَابَ وَقَدَّتْ قَمِيصَهُ مِن دُبُرٍ وَأَلْفَيَا سَيِّدَهَا لَدَا الْبَابِ ۚ قَالَتْ مَا جَزَاءُ مَنْ أَرَادَ بِأَهْلِكَ سُوءًا إِلَّا أَن يُسْجَنَ أَوْ عَذَابٌ أَلِيمٌ ﴿٢٥﴾

२५) दुवै ढोकातिर दगुरे र ती महिलाले उनको कमिज पछाडिबाट समाती च्यातीहाली, र दुवैको ढोकानिर ती स्त्रीको पतिसित भेट भइहाल्यो, अनि भन्न थाली कि जुन मानिसले तिम्रो स्वास्नी प्रति यस्तो नराम्रो भावना राख्दछ, उसको दण्ड यो छ कि उसलाई कैद गरियोस् अथवा अरु कुनै दुःखपूर्ण सजाय दिइयोस् ।

قَالَ هِيَ رَاوَدَتْنِي عَن نَّفْسِي ۚ وَشَهِدَ شَاهِدٌ مِّنْ أَهْلِهَا إِن كَانَ قَمِيصُهُ قُدَّ مِن قُبُلٍ فَصَدَقَتْ وَهُوَ مِنَ الْكَاذِبِينَ ﴿٢٦﴾

२६) यूसुफले भनेः यस स्वास्नी मानिसले नै मलाई आफूतिर बहकाउन खोजेको थियो र सोही महिलाको आफन्तहरू मध्ये एकजना गवाहले यो भन्योः कि यदि उसको कमिज अगाडिबाट च्यातिएको छ भने यो साँचो छे र यूसुफ झूठ बोल्ने हो ।

وَإِن كَانَ قَمِيصُهُ قُدَّ مِن دُبُرٍ فَكَذَبَتْ وَهُوَ مِنَ الصَّادِقِينَ ﴿٢٧﴾

२७) र यदि कमिज पछाडिबाट च्यातिएको छ भने यो स्त्री झूठो (छे) र यूसुफ साँचो हो ।

فَلَمَّا رَأَىٰ قَمِيصَهُ قُدَّ مِن دُبُرٍ قَالَ إِنَّهُ مِن كَيْدِكُنَّ ۖ إِنَّ كَيْدَكُنَّ عَظِيمٌ ﴿٢٨﴾

२८) तसर्थ जब उसले देख्योः कि कमिज पछाडिबाट च्यातिएको छ, तब उसले भन्योः कि यो तिम्रै षडयन्त्र हो र सन्देह छैन तिमी आईमाईहरूको चालबाजी ठूलो हुन्छ ।

يُوسُفُ أَعْرِضْ عَنْ هَٰذَا ۚ وَاسْتَغْفِرِي لِذَنبِكِ ۖ إِنَّكِ كُنتِ مِنَ الْخَاطِئِينَ ﴿٢٩﴾

२९) यूसुफ ! यो कुराको तिमी वास्ता नगर र स्त्री ! तिमी आफ्नो दुष्कर्मको निम्ति क्षमायाचना गर, निःसन्देह दोष तिम्रो नै छ ।

وَقَالَ نِسْوَةٌ فِي الْمَدِينَةِ امْرَأَتُ الْعَزِيزِ تُرَاوِدُ فَتَاهَا عَن نَّفْسِهِ ۖ قَدْ شَغَفَهَا حُبًّا ۖ إِنَّا لَنَرَاهَا فِي ضَلَالٍ مُّبِينٍ ﴿٣٠﴾

३०) र शहरमा आईमाईहरूले कुरा गर्न थालिन् कि “अजीजकी” स्वास्नी आफ्नो युवा दासलाई आफूतिर प्रवृत्त गर्न चाहिन्छिन्, र यूसुफको माया उसको हृदयलाई गहिरो रूपमा प्रभावित गरिसकेको छ । हामीले देख्दछौं कि त्यो सरासर मार्ग विचलित भइराखेकी छे ।

فَلَمَّا سَمِعَتْ بِمَكْرِهِنَّ أَرْسَلَتْ إِلَيْهِنَّ وَأَعْتَدَتْ لَهُنَّ مُتَّكَأً وَآتَتْ كُلَّ وَاحِدَةٍ مِّنْهُنَّ سِكِّينًا وَقَالَتِ اخْرُجْ عَلَيْهِنَّ ۖ فَلَمَّا رَأَيْنَهُ أَكْبَرْنَهُ وَقَطَّعْنَ أَيْدِيَهُنَّ وَقُلْنَ حَاشَ لِلَّهِ مَا هَٰذَا بَشَرًا إِنْ هَٰذَا إِلَّا مَلَكٌ كَرِيمٌ ﴿٣١﴾

३१) उसले (जुलेखाले) जब यी आईमाईहरूका मक्कारीका कुरा सुन्यो, तब उनलाई बोलाउन सन्देश पठायो, र उनको लागि बैठकको आयोजना गऱ्यो, र हरेकलाई एउटा एउटा छुरी दियो, र भन्यो कि हे यूसुफ उनको सामुन्ने आऊ, जब आईमाईहरूले देखिन् त आश्चर्य चकित भइन् र आफ्नो हात काटिहालिन् । र उनीहरूले भनिन्कि अल्लाह धन्य छ ! यो मनुष्य होइन, अवश्य कुनै मर्यादित स्वर्गदूत हो ।

قَالَتْ فَذَٰلِكُنَّ الَّذِي لُمْتُنَّنِي فِيهِ ۖ وَلَقَدْ رَاوَدتُّهُ عَن نَّفْسِهِ فَاسْتَعْصَمَ ۖ وَلَئِن لَّمْ يَفْعَلْ مَا آمُرُهُ لَيُسْجَنَنَّ وَلَيَكُونًا مِّنَ الصَّاغِرِينَ ﴿٣٢﴾

३२) अनि अज़ीज़े मिस्रकी पत्नीले भनी, यो त्यही हो जसको बारेमा तिमीहरूले मलाई दोष लगाउँदैथ्यौ र निःसन्देह मैले उसलाई आफूतिर प्रवृत्त गर्न खोजेको हो, तर यो विचलित भएन

र यदि यसले त्यो काम गर्दैन जुन मैले यसलाई भनें त यो बन्दी बनाइनेछ र अपमानित हुनेछ ।

قَالَ رَبِّ السِّجْنُ اَحَبُّ اِلَيَّ مِمَّا يَدْعُوْنَنِيْٓ اِلَيْهِ ۚ وَاِلَّا تَصْرِفْ عَنِّيْ كَيْدَهُنَّ اَصْبُ اِلَيْهِنَّ وَاَكُنْ مِّنَ الْجٰهِلِيْنَ ﴿٣٣﴾

३३) यूसुफले प्रार्थना गरे कि हे मेरो पालनकर्ता ! जुन कामतिर यिनीहरूले मलाई बोलाइराखेछिन् त्यसको सट्टामा मलाई कैद स्वीकार छ, र एकदम यदि तिमीले मबाट उनीहरूको षड्यन्त्र हटाएनौ भने म तिनीहरूतिर प्रवृत्त भइहाल्नेछु र अज्ञानीहरूमध्येको भइहाल्नेछु ।

فَاسْتَجَابَ لَهٗ رَبُّهٗ فَصَرَفَ عَنْهُ كَيْدَهُنَّ ؕ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٣٤﴾

३४) अनि अल्लाहले उनको प्रार्थना स्वीकार गरिहाल्यो, र उनीबाट आईमाईहरूको जाल समाप्त गरिहाल्यो । निःसन्देह ऊ सुन्ने (र) जान्नेवाला छ ।

ثُمَّ بَدَا لَهُمْ مِّنْۢ بَعْدِ مَا رَاَوُا الْاٰيٰتِ لَيَسْجُنُنَّهٗ حَتّٰى حِيْنٍ ﴿٣٥﴾

३५) तर यसका बावजूद कि तिनीहरूले धेरै निशानीहरू देखिसकेका थिए तैपनि उनीहरू यसै कुरामा सहमत भएकी केही दिनको लागि कैदमा नै राखियोस् ।

وَدَخَلَ مَعَهُ السِّجْنَ فَتَيٰنِ ؕ قَالَ اَحَدُهُمَآ اِنِّيْٓ اَرٰىنِيْٓ اَعْصِرُ خَمْرًا ۚ وَقَالَ الْاٰخَرُ اِنِّيْٓ اَرٰىنِيْٓ اَحْمِلُ فَوْقَ رَاْسِيْ خُبْزًا تَاْكُلُ الطَّيْرُ مِنْهُ ؕ نَبِّئْنَا بِتَاْوِيْلِهٖ ۚ اِنَّا نَرٰىكَ مِنَ الْمُحْسِنِيْنَ ﴿٣٦﴾

३६) र उनको साथमा अरु दुई युवकहरू पनि जेलमा प्रवेश गरे । तिनीहरू मध्ये एउटाले भन्यो कि मैले सपना देखेको छुः कि म मदिराको निम्ति अंगूर निचोरिराखेको छु । अर्कोले भन्योः कि मैले पनि सपना देखेको छु मैले आफ्नो टाउकोमा रोटीहरू बोकेको छु र पंक्षीहरूले त्यसबाट खाइराखेका छन् । तसर्थ हामीलाई यसको अर्थ भनिदिनुस्

किनभने हामीले तपाईलाई असल मानिसको रूपमा देखिराखेका छौं ।

قَالَ لَا يَأْتِيكُمَا طَعَامٌ تُرْزَقَانِهِۦٓ إِلَّا نَبَّأْتُكُمَا بِتَأْوِيلِهِۦ قَبْلَ أَن يَأْتِيَكُمَا ۚ ذَٰلِكُمَا مِمَّا عَلَّمَنِى رَبِّىٓ ۚ إِنِّى تَرَكْتُ مِلَّةَ قَوْمٍ لَّا يُؤْمِنُونَ بِٱللَّهِ وَهُم بِٱلْـَٔاخِرَةِ هُمْ كَٰفِرُونَ ﴿٣٧﴾

३७) यूसुफले भने: कि जुन खाना तिमीलाई प्राप्त हुनेवाला छ, त्यो आउनुभन्दा अगाडि नै मैले तिमीलाई त्यसको अर्थ र वास्तविकता भनि दिनेछु । यी ती कुराहरू मध्येका हुन्, जुन मेरो पालनकर्ताले मलाई सिकाउनु भएको छ । जुन मानिसहरू अल्लाहमाथि विश्वास गर्दैनन् र परलोकको दिनलाई नकार्दछन्, मैले तिनीहरूको धर्म छोडिसकेको छु ।

وَٱتَّبَعْتُ مِلَّةَ ءَابَآءِىٓ إِبْرَٰهِيمَ وَإِسْحَٰقَ وَيَعْقُوبَ ۚ مَا كَانَ لَنَآ أَن نُّشْرِكَ بِٱللَّهِ مِن شَىْءٍ ۚ ذَٰلِكَ مِن فَضْلِ ٱللَّهِ عَلَيْنَا وَعَلَى ٱلنَّاسِ وَلَٰكِنَّ أَكْثَرَ ٱلنَّاسِ لَا يَشْكُرُونَ ﴿٣٨﴾

३८) र आफ्ना पुर्खाहरू, “ईब्राहीम” र “इस्हाक” र “याकूबका” धर्मको अनुयायी हूँ । हामीलाई उचित छैन, कि कुनै कुरालाई अल्लाहको साथमा दाँजौं । यो अल्लाहको अनुकम्पा हो, हामीमाथि पनि र अरु मानिसहरू माथि पनि, तर धेरै मानिसहरूले आभार प्रकट गर्दैनन् ।

يَٰصَٰحِبَىِ ٱلسِّجْنِ ءَأَرْبَابٌ مُّتَفَرِّقُونَ خَيْرٌ أَمِ ٱللَّهُ ٱلْوَٰحِدُ ٱلْقَهَّارُ ﴿٣٩﴾

३९) मेरो जेलमा बस्ने साथीहरू ! के कैयौं पूज्यहरू (हुनु) राम्रो हुन्छ वा एक अल्लाह जो महान् र सर्वशक्तिमान छ ।

مَا تَعْبُدُونَ مِن دُونِهِۦٓ إِلَّآ أَسْمَآءً سَمَّيْتُمُوهَآ أَنتُمْ وَءَابَآؤُكُم مَّآ أَنزَلَ ٱللَّهُ بِهَا مِن سُلْطَٰنٍ ۚ إِنِ ٱلْحُكْمُ إِلَّا لِلَّهِ ۚ أَمَرَ أَلَّا تَعْبُدُوٓا۟ إِلَّآ إِيَّاهُ ۚ ذَٰلِكَ ٱلدِّينُ ٱلْقَيِّمُ وَلَٰكِنَّ أَكْثَرَ ٱلنَّاسِ لَا يَعْلَمُونَ ﴿٤٠﴾

४०) जुन कुराहरूलाई तिमीले अल्लाह बाहेक पूजा गर्दछौ तिनीहरू मात्र नाम हुन्, जुन तिमीले र तिम्रा पुर्खाहरूले नामाकरण गरिहालेका छौ । किनभने अल्लाहले तिनीहरूको

कुनै प्रमाण पठाएको छैन । सुनीराखकि अल्लाह बाहेक अरु कसैको सत्ता छैन । उसले आदेश गरेको छ, कि उस बाहेक कसैको पूजा नगर, यही सोझो धर्म हो तर धेरै मानिसहरू जान्दैनन् ।

يٰصَاحِبَيِ السِّجْنِ اَمَّآ اَحَدُكُمَا فَيَسْقِيْ رَبَّهٗ
خَمْرًا ۚ وَاَمَّا الْاٰخَرُ فَيُصْلَبُ فَتَاْكُلُ الطَّيْرُ
مِنْ رَّاْسِهٖ ؕ قُضِيَ الْاَمْرُ الَّذِيْ فِيْهِ تَسْتَفْتِيٰنِ ﴿٤١﴾

४१) मेरा जेलका साथीहरू हो ! तिमी मध्ये एउटा त आफ्नो मालिकलाई मदिरा खुवाउन नियुक्त हुनेछ र जुन दोस्रो छ त्यसलाई फाँसिमा झुण्ड्याइने छ र पंक्षीहरूले उसको टाउको लुछेर खानेछन् । जुन कुरा तिमीले मसित सोध्दैछौ त्यसको निर्णय भइसकेको छ ।

وَقَالَ لِلَّذِيْ ظَنَّ اَنَّهٗ نَاجٍ مِّنْهُمَا اذْكُرْنِيْ
عِنْدَ رَبِّكَ ؗ فَاَنْسٰىهُ الشَّيْطٰنُ ذِكْرَ رَبِّهٖ فَلَبِثَ
فِي السِّجْنِ بِضْعَ سِنِيْنَ ﴿٤٢﴾

४२) र दुवै मानिसहरू मध्येबाट जसको बारेमा (यूसुफले) ठानेका थिए कि त्यसले मुक्ति पाइहाल्नेछ, उससित उनले भने कि आफ्नो मालिकसँग मेरो चर्चा पनि गर्नु, तर शैतानले उसलाई आफ्नो राजासँग उनको चर्चा गर्न भुलाइदियो, र यूसुफ कैयौ वर्ष जेलमा नै रहिरहे ।

وَقَالَ الْمَلِكُ اِنِّيْٓ اَرٰى سَبْعَ بَقَرٰتٍ سِمَانٍ
يَّاْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَّسَبْعَ سُنْۢبُلٰتٍ خُضْرٍ
وَّاُخَرَ يٰبِسٰتٍ ؕ يٰٓاَيُّهَا الْمَلَاُ اَفْتُوْنِيْ فِيْ رُءْيَايَ
اِنْ كُنْتُمْ لِلرُّءْيَا تَعْبُرُوْنَ ﴿٤٣﴾

४३) र राजाले भने कि मैले (सपना देखेको छु), कि सातवटा मोटी गाईहरू छन् जसलाई सातवटा दुब्ली गाईहरूले खाइराखेका छन्, र अन्नका सातवटा हरिया वाला छन् र (सात) सुकेका । हे दरवारीहरू ! यदि तिमीहरू सपनाहरूको अर्थ भन्न

सक्छौ भने मलाई मेरो सपनाको अर्थ बताऊ ।

قَالُوٓا أَضْغَٰثُ أَحْلَٰمٍ ۖ وَمَا نَحْنُ بِتَأْوِيلِ ٱلْأَحْلَٰمِ بِعَٰلِمِينَ ﴿٤٤﴾

४४) उनले भने, यी त अन्यौलमा पार्ने सपनाहरू हुन्, र हामीलाई यस्ता सपनाहरूको अर्थ आउँदैन ।

وَقَالَ ٱلَّذِى نَجَا مِنْهُمَا وَٱدَّكَرَ بَعْدَ أُمَّةٍ أَنَا۠ أُنَبِّئُكُم بِتَأْوِيلِهِۦ فَأَرْسِلُونِ ﴿٤٥﴾

४५) अहिले त्यो मानिस जुन दुई कैदिहरू मध्येबाट छुटकारा पाइसकेको थियो र जसलाई एउटा अन्तराल पश्चात त्यस कुराको स्मरण भयो, उसले भन्यो कि म, तपाईलाई यसको अर्थ बताउँछु । मलाई (कारागारमा) जाने अनुमति दिनस् ।

يُوسُفُ أَيُّهَا ٱلصِّدِّيقُ أَفْتِنَا فِى سَبْعِ بَقَرَٰتٍ سِمَانٍ يَأْكُلُهُنَّ سَبْعٌ عِجَافٌ وَسَبْعِ سُنۢبُلَٰتٍ خُضْرٍ وَأُخَرَ يَابِسَٰتٍ لَّعَلِّىٓ أَرْجِعُ إِلَى ٱلنَّاسِ لَعَلَّهُمْ يَعْلَمُونَ ﴿٤٦﴾

४६) (त्यो यूसुफको समीपमा आयो र भन्न थाल्यो) यूसुफ ! हे सत्यनिष्ठ हामीलाई (यस सपनाको अर्थ) भन्नुस् कि सातवटा मोटी गाइहरूलाई सातवटा दुब्ली गाईहरूले खाईराखेका छन् र सातवटा बालाहरू हरिया छन् र सातवटा सुकेका जसबाट म मानिसहरूको समीपमा गई अर्थ भनूँ, हुनसक्छ कि तिनीहरूले जानुन् ।

قَالَ تَزْرَعُونَ سَبْعَ سِنِينَ دَأَبًا فَمَا حَصَدتُّمْ فَذَرُوهُ فِى سُنۢبُلِهِۦٓ إِلَّا قَلِيلًا مِّمَّا تَأْكُلُونَ ﴿٤٧﴾

४७) यूसुफले भने: कि तिमीहरूले सात वर्षसम्म लगातार खेती गर्दै रह, अनि बाली काटेर बाला सहित रहनदिनु केही अन्न बाहेक जुन तिमीले खान्छौ ।

ثُمَّ يَأْتِى مِنۢ بَعْدِ ذَٰلِكَ سَبْعٌ شِدَادٌ يَأْكُلْنَ مَا قَدَّمْتُمْ لَهُنَّ إِلَّا قَلِيلًا مِّمَّا تُحْصِنُونَ ﴿٤٨﴾

४८) अनि यस पश्चात सात वर्षसम्म अत्यन्त गम्भीर अनिकाल आउनेछ यसमा जुन अनाज तिमीले जम्मा

गरेर राखेका छौ, तिनीहरूले त्यो सबै खानेछन्, मात्र त्यही अलिकति बाँकी रहनेछ जुनकि तिमीले जतनले राखिरहने छौ ।

ثُمَّ يَأْتِي مِنْ بَعْدِ ذَٰلِكَ عَامٌ فِيهِ يُغَاثُ النَّاسُ وَفِيهِ يَعْصِرُونَ ﴿٤٩﴾

४९) अनि यस पश्चात एक वर्ष यस्तो आउनेछ कि जसमा निकै बृष्टि हुने छ र मानिसहरू त्यसबाट (अंगूर समेतको) धेरै रस निचोर्नेछन् ।

وَقَالَ الْمَلِكُ ائْتُونِي بِهِ ۖ فَلَمَّا جَاءَهُ الرَّسُولُ قَالَ ارْجِعْ إِلَىٰ رَبِّكَ فَاسْأَلْهُ مَا بَالُ النِّسْوَةِ اللَّاتِي قَطَّعْنَ أَيْدِيَهُنَّ ۚ إِنَّ رَبِّي بِكَيْدِهِنَّ عَلِيمٌ ﴿٥٠﴾

५०) (यो अर्थ सुनेर) राजाले आदेश दियो: "कि यूसुफलाई मेरो पासमा ल्याऊ ।" जब सन्देशबाहक उनको पासमा गयो त उनले भनेकी आफ्नो मालिकको सामु फर्केर जाऊ र तिनीसित सोध कि ती आईमाईहरूको वास्तविक हाल के छ, जसले कि आफ्ना हात काटेका थिइन् । निःसन्देह मेरो पालनकर्ता तिनीहरूको षड्यन्त्रलाई राम्ररी जान्दछ ।

قَالَ مَا خَطْبُكُنَّ إِذْ رَاوَدتُّنَّ يُوسُفَ عَن نَّفْسِهِ ۚ قُلْنَ حَاشَ لِلَّهِ مَا عَلِمْنَا عَلَيْهِ مِن سُوءٍ ۚ قَالَتِ امْرَأَتُ الْعَزِيزِ الْآنَ حَصْحَصَ الْحَقُّ أَنَا رَاوَدتُّهُ عَن نَّفْسِهِ وَإِنَّهُ لَمِنَ الصَّادِقِينَ ﴿٥١﴾

५१) राजाले महिलाहरूसित सोध्यो: कि त्यसबेलाको सत्य घटना के थियो, जब तिमीहरूले यूसुफलाई आफूतिर आकृष्ट गर्न चाह्यौ । सबैले भने कि "अल्लाहले हाम्रो संरक्षण गरुन्" हामीले यूसुफमा कुनै नराम्रो कुरो पाएनौं । अनि अजीजकी स्वास्नीले पनि भनिन् अब त साँचो कुरा प्रकट भइसकेको छ, मैले नै उसलाई आफूतिर प्रवृत्त गर्न चाहेको थिएँ र ऊ निःसन्देह साँचोहरू मध्येको हो ।

ذَٰلِكَ لِيَعْلَمَ أَنِّي لَمْ أَخُنْهُ بِالْغَيْبِ وَأَنَّ اللَّهَ
لَا يَهْدِي كَيْدَ الْخَائِنِينَ ﴿٥٢﴾

५२) (यूसुफ अलै.ले भनेकि) यो यसकारण (सोधेको हो) की अजीजलाई विश्वास होस् कि मैले उसको अनुपस्थितिमा उसप्रति विश्वासघात गरेको छैन र यो पनि कि अल्लाह जाल रची दुष्टकर्म गर्नेहरूलाई सफल हुन दिंदैन ।

وَمَا أُبَرِّئُ نَفْسِي ۚ إِنَّ النَّفْسَ لَأَمَّارَةٌ
بِالسُّوءِ إِلَّا مَا رَحِمَ رَبِّي ۚ إِنَّ رَبِّي غَفُورٌ رَّحِيمٌ ﴿٥٣﴾

५३) (यूसुफले भने) म आफ्नो पवित्रताको बखान गर्दिन, निःसंकोच यो भन्न सक्छु कि मनले त नराम्रो कुरालाई वढ़ावा दिने गर्दछ । तर मेरो पालनकर्ताले दया गरेमा कुरा बेग्लै हो । वस्तुतः मेरो पालनकर्ता धेरै दया गर्नेवाला र ज्यादै कृपा गर्ने वाला छ ।

وَقَالَ الْمَلِكُ ائْتُونِي بِهِ أَسْتَخْلِصْهُ لِنَفْسِي ۖ فَلَمَّا
كَلَّمَهُ قَالَ إِنَّكَ الْيَوْمَ لَدَيْنَا مَكِينٌ أَمِينٌ ﴿٥٤﴾

५४) राजाले आदेश दियो "उसलाई मेरो नजिक ल्याऊ" कि म उसलाई आफ्नो खास कार्यकोलागि नियुक्त गरुँला । फेरि बादशाहले जब उनी संग कुराकानी गरे, त्यस पछि बादशाहले भन्यो "तपाई म कहाँ आजै देखि प्रतिष्ठित र सम्मानित हुनु हुन्छ" ।

قَالَ اجْعَلْنِي عَلَىٰ خَزَائِنِ الْأَرْضِ ۖ إِنِّي حَفِيظٌ
عَلِيمٌ ﴿٥٥﴾

५५) यूसुफले भने, तपाईले मलाई राष्ट्रको ढुकुटीपाल नियुक्त गर्नु होस् म त्यसलाई रक्षा गर्ने वाला तथा त्यसबाट चनाखो रहुँला ।

وَكَذَٰلِكَ مَكَّنَّا لِيُوسُفَ فِي الْأَرْضِ يَتَبَوَّأُ مِنْهَا
حَيْثُ يَشَاءُ ۚ نُصِيبُ بِرَحْمَتِنَا مَن نَّشَاءُ ۖ وَلَا نُضِيعُ
أَجْرَ الْمُحْسِنِينَ ﴿٥٦﴾

५६) यसरी मैले यूसुफलाई राष्ट्रको अख्तियारी दिएँ उनी जहाँ पनि चाहे अनुसार रहन र गर्न सक्ने भए ।

म जसलाई चाहन्छु त्यसलाई आफ्नो दया पुऱ्याई दिन्छु । म राम्रो कार्य गर्नेवालाको राम्रोपनालाई त्यसै खेर जान दिन्न ।

وَلَأَجْرُ الْآخِرَةِ خَيْرٌ لِّلَّذِينَ آمَنُوا وَكَانُوا يَتَّقُونَ ﴿٥٧﴾

५७) निःसन्देह ईमानदार र डर मान्नेवालाहरूको अन्तिम पुण्य अत्यन्त वेश छ ।

وَجَاءَ إِخْوَةُ يُوسُفَ فَدَخَلُوا عَلَيْهِ فَعَرَفَهُمْ وَهُمْ لَهُ مُنكِرُونَ ﴿٥٨﴾

५८) यूसुफको दाजुभाइ आए र यूसुफ निर गए अनि उनले उनीहरूलाई चिने, तर तिनीहरूले चिन्न सकेनन् ।

وَلَمَّا جَهَّزَهُم بِجَهَازِهِمْ قَالَ ائْتُونِي بِأَخٍ لَّكُم مِّنْ أَبِيكُمْ ۚ أَلَا تَرَوْنَ أَنِّي أُوفِي الْكَيْلَ وَأَنَا خَيْرُ الْمُنزِلِينَ ﴿٥٩﴾

५९) जब उनले तिनीहरूलाई सामग्री प्रदान गर्नु भयो त भन्नु भयो "तिमी आफ्नो भाइलाई पनि ल्याऊ जुन तिम्रो पिताबाट छ । के तिमीले देखेनौ ? कि म पूरा नाप जोख गरी दिन्छु र म पनि राम्रो आतिथ्य सत्कार गर्दछु ।

فَإِن لَّمْ تَأْتُونِي بِهِ فَلَا كَيْلَ لَكُمْ عِندِي وَلَا تَقْرَبُونِ ﴿٦٠﴾

६०) फेरि यदि तिमीहरूले उसलाई मेरो नजिक ल्याएनौं भने तब तिमीहरूलाई मेरो तर्फबाट केही खाद्यान्न मिल्दैन बरु तिमीहरू मेरो नजिक कदापि आउनु हुन्न ।

قَالُوا سَنُرَاوِدُ عَنْهُ أَبَاهُ وَإِنَّا لَفَاعِلُونَ ﴿٦١﴾

६१) उनीहरूले भनेः कि ठीक छ हामी उसको पितालाई यसवापत राजी गर्ने छौं र पूरा प्रयत्न गरौंला" ।

وَقَالَ لِفِتْيَانِهِ اجْعَلُوا بِضَاعَتَهُمْ فِي رِحَالِهِمْ لَعَلَّهُمْ يَعْرِفُونَهَا إِذَا انقَلَبُوا إِلَىٰ أَهْلِهِمْ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٦٢﴾

६२) र आफ्ना सेवकहरूलाई भन्नु भयो "कि यिनीहरूको रकम र सामान बोराहरूमा राखी दिनु । कि जब

उनीहरू आफ्नो घर परिवारमा पुगुन् र त्यसलाई चिनुन् तब धेरै सम्भव छ कि तिनीहरू फर्केर आऊन् ।

فَلَمَّا رَجَعُوٓا إِلَىٰٓ أَبِيهِمْ قَالُوا يَٰٓأَبَانَا مُنِعَ مِنَّا ٱلْكَيْلُ فَأَرْسِلْ مَعَنَآ أَخَانَا نَكْتَلْ وَإِنَّا لَهُۥ لَحَٰفِظُونَ ﴿٦٣﴾

६३) जब उनीहरू फर्केर आफ्नो पितानिर पुगे, अनि भन्न थाले:, कि पिताजी हाम्रो लागि खाद्यान्न सामग्री रोकि दिइएको छ। त्यसकारण हाम्रो भाइलाई हाम्रो साथ जान दिनुस्, त्यसबाट हामीलाई खाद्यान्न सामग्री मिलोस्। र हामी उसको पूरा सुरक्षा गर्ने छौं ।

قَالَ هَلْ ءَامَنُكُمْ عَلَيْهِ إِلَّا كَمَآ أَمِنتُكُمْ عَلَىٰٓ أَخِيهِ مِن قَبْلُ ۖ فَٱللَّهُ خَيْرٌ حَٰفِظًا ۖ وَهُوَ أَرْحَمُ ٱلرَّٰحِمِينَ ﴿٦٤﴾

६४) याकूबले भने: कि मलाई यस बापत तिम्रो बस त्यस्तै विश्वास छ जस्तो यस भन्दा अगाडि उसको दाजुको बारेमा थियो । तर अल्लाह नै सब भन्दा राम्रो संरक्षक छ, र त्यो सबै दयावान भन्दा असीम दयालु छ ।

وَلَمَّا فَتَحُوا مَتَٰعَهُمْ وَجَدُوا بِضَٰعَتَهُمْ رُدَّتْ إِلَيْهِمْ ۖ قَالُوا يَٰٓأَبَانَا مَا نَبْغِى ۖ هَٰذِهِۦ بِضَٰعَتُنَا رُدَّتْ إِلَيْنَا ۖ وَنَمِيرُ أَهْلَنَا وَنَحْفَظُ أَخَانَا وَنَزْدَادُ كَيْلَ بَعِيرٍ ۖ ذَٰلِكَ كَيْلٌ يَسِيرٌ ﴿٦٥﴾

६५) जब उनीहरूले आफ्नो सामान खोले, तब आफ्नो रकम त्यही रहेको पाए । जुन उनीहरूलाई नै फर्काई दिइएको थियो । भन्न थाले हे पिता जी ! अब हामीलाई अरुके चाहिन्छ ? हेर्नुस हाम्रो आफ्नो रकम पनि फर्काई दिइएको छ। हामी आफ्नो घर परिवारको लागि खाद्यान्य ल्यााउने छौं, र आफ्नो भाइको सुरक्षा गर्ने छौं। र एक ऊँट भरी खाद्यान्न बढ़ी ल्याउने छौं । र यो ल्याउन धेरै सजिलो छ ।

قَالَ لَنْ أُرْسِلَهُ مَعَكُمْ حَتّٰى تُؤْتُوْنِ مَوْثِقًا مِّنَ اللّٰهِ لَتَأْتُنَّنِيْ بِهٖٓ إِلَّآ أَنْ يُّحَاطَ بِكُمْ ۚ فَلَمَّآ اٰتَوْهُ مَوْثِقَهُمْ قَالَ اللّٰهُ عَلٰى مَا نَقُوْلُ وَكِيْلٌ ﴿٦٦﴾

६६) याकूबले भने ! मैले त कुनै पनि हालतमा उसलाई तिम्रो साथ पठाउँदिन, जबसम्म कि तिमी अल्लाहलाई बीचमा साक्षी राखी वाचा गर्दैनौं, कि तिमीले उसलाई मेरो पास (सुरक्षित) पुऱ्याई दिने छौं, यो अर्को कुराहो कि तिमीहरू सबै समातिने छौ । (अतः) जब उनीहरूले पक्का वाचा दिए, तब उनले भने की म जुन कुरो भन्दछु त्यस माथि अल्लाह नै संरक्षक छ ।

وَقَالَ يٰبَنِيَّ لَا تَدْخُلُوْا مِنْۢ بَابٍ وَّاحِدٍ وَّادْخُلُوْا مِنْ أَبْوَابٍ مُّتَفَرِّقَةٍ ۗ وَمَآ أُغْنِيْ عَنْكُمْ مِّنَ اللّٰهِ مِنْ شَيْءٍ ۗ إِنِ الْحُكْمُ إِلَّا لِلّٰهِ ۗ عَلَيْهِ تَوَكَّلْتُ ۚ وَعَلَيْهِ فَلْيَتَوَكَّلِ الْمُتَوَكِّلُوْنَ ﴿٦٧﴾

६७) र (याकूबले) भन्नु भयोः हे मेरा पुत्रहरू ! तिमी सबै एउटै ढोकाबाट न जानु बरु बेग्लाबेग्लै ढोकाबाट प्रवेश गर्नु । म अल्लाहको तर्फबाट आउने कुनै पनि चिजलाई तिमीहरूबाट हटाउन सक्तिन । हुकुम मात्र अल्लाहको चल्दछ । मेरो पूर्ण भरोसा उसै माथि छ, हरेक भरोसा गर्नवालालाई उसै माथि भरोसा गर्नु पर्दछ ।

وَلَمَّا دَخَلُوْا مِنْ حَيْثُ أَمَرَهُمْ أَبُوْهُمْ ۗ مَا كَانَ يُغْنِيْ عَنْهُمْ مِّنَ اللّٰهِ مِنْ شَيْءٍ إِلَّا حَاجَةً فِيْ نَفْسِ يَعْقُوْبَ قَضٰىهَا ۗ وَإِنَّهٗ لَذُوْ عِلْمٍ لِّمَا عَلَّمْنٰهُ وَلٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٦٨﴾

६८) जब तिनीहरूले त्यही बाटोबाट जसको आदेश उनको पिताले उनलाई दिएका थिए गए । केही पनि यस्तो थिएन कि अल्लाहले जुन कुरो निश्चित गरि दिएको छ त्यो उसबाट उसलाई अलिकति पनि बचाउन सकोस् । परन्तु याकूबको मनमा यो बिचार आयो, जसलाई उसले पूरा गऱ्यो ।

निःसन्देह ऊ मैले सिकाएको ज्ञानको ज्ञाता थियो, परन्तु साधारणतया मानिसहरू जान्दैनन् ।

وَلَمَّا دَخَلُوا عَلٰى يُوسُفَ اٰوٰٓى اِلَيْهِ اَخَاهُ قَالَ اِنِّيْٓ اَنَا اَخُوْكَ فَلَا تَبْتَئِسْ بِمَا كَانُوْا يَعْمَلُوْنَ ﴿٦٩﴾

६९) यिनीहरू सबै जब युसूफको नजिक पुगे तब उसले आफ्नो भाइलाई आफ्नो नजिक बसाल्यो, र भन्योः "कि म तिम्रो भाइ (यूसुफ) हूँ," पुनः भने यिनीहरूले जे पनि गरेका छन् त्यस माथि दुःख नगर ।

فَلَمَّا جَهَّزَهُمْ بِجَهَازِهِمْ جَعَلَ السِّقَايَةَ فِيْ رَحْلِ اَخِيْهِ ثُمَّ اَذَّنَ مُؤَذِّنٌ اَيَّتُهَا الْعِيْرُ اِنَّكُمْ لَسٰرِقُوْنَ ﴿٧٠﴾

७०) फेरि जब उनलाई उनको सामान तथा रकमहरू ठिक ठाक गरी दिनुभयो, तब आफ्नो भाइको झोलामा पानी खाने भाडो राखी दिनुभयो, फेरि एउटा बोलाउने मान्छेले कराएर भन्योः समूह वालाहरू हो ! तिमीहरू त चोर हौ ।

قَالُوْا وَاَقْبَلُوْا عَلَيْهِمْ مَّاذَا تَفْقِدُوْنَ ﴿٧١﴾

७१) उनीहरूले उनी तर्फ मुख पल्टाएर भने कि तिम्रो कुन वस्तु हराए को छ ?

قَالُوْا نَفْقِدُ صُوَاعَ الْمَلِكِ وَلِمَنْ جَآءَ بِهٖ حِمْلُ بَعِيْرٍ وَّاَنَا بِهٖ زَعِيْمٌ ﴿٧٢﴾

७२) उत्तर दिइयो कि "शाही पैमाना हराई सकेको छ । जसले त्यसलाई ल्याई दिन्छ त्यस व्यक्तिलाई एउटा ऊँटको भार बराबर खाद्यान्न मिल्ने छ, यस प्रतिज्ञाको म जमानती हूँ ।

قَالُوْا تَاللّٰهِ لَقَدْ عَلِمْتُمْ مَّا جِئْنَا لِنُفْسِدَ فِي الْاَرْضِ وَمَا كُنَّا سٰرِقِيْنَ ﴿٧٣﴾

७३) उनीहरूले भनेः अल्लाहको कसम ! तिमीलाई पूर्ण ज्ञात छ कि हामी यस राष्ट्रमा झैं झगडा फैलाउनका लागि आएका होइनौं, र न हामी चोर हौं ।

قَالُوْا فَمَا جَزَآؤُهٗۤ اِنْ كُنْتُمْ كٰذِبِيْنَ ﴿٧٤﴾

७४) उनले भने अब बताऊ, “चोरको दण्ड के हुन्छ ?” यदि तिमी झूठो छौ ।

قَالُوْا جَزَآؤُهٗ مَنْ وُّجِدَ فِيْ رَحْلِهٖ فَهُوَ جَزَآؤُهٗ ؕ
كَذٰلِكَ نَجْزِي الظّٰلِمِيْنَ ﴿٧٥﴾

७५) उत्तर दिए कि जसको थैलाबाट पैमाना (अङ्खोरा) प्राप्त हुनेछ उही नै त्यसको भर्पाई हुनेछ । हामी त यस्तो दुष्टहरूलाई यस्तै दण्ड दिन्छौं ।

فَبَدَاَ بِاَوْعِيَتِهِمْ قَبْلَ وِعَآءِ اَخِيْهِ ثُمَّ
اسْتَخْرَجَهَا مِنْ وِّعَآءِ اَخِيْهِ ؕ كَذٰلِكَ كِدْنَا
لِيُوْسُفَ ؕ مَا كَانَ لِيَاْخُذَ اَخَاهُ فِيْ دِيْنِ
الْمَلِكِ اِلَّاۤ اَنْ يَّشَآءَ اللّٰهُ ؕ نَرْفَعُ دَرَجٰتٍ مَّنْ نَّشَآءُ ؕ
وَفَوْقَ كُلِّ ذِيْ عِلْمٍ عَلِيْمٌ ﴿٧٦﴾

७६) तब यूसुफले उनीहरूको सामानको खानातलाशी प्रारम्भ गरे, आफ्नो भाइको सामान खानतलाशी गर्नु भन्दा पहिले, त्यस पछि त्यस पैमानालाई आफ्नो भाइको सामानबाट बरामद गरें । हामीले (अल्लाह) यूसुफको लागि यस्तै युक्ति निकालें । त्यस राजाको राजकीय कानून अनुसार उहाँ आफ्नो भाइलाई राख्न सक्तैनथे । परन्तु यदि यो अल्लाहलाई स्वीकार भयो भने, हामीले, (अल्लाह) जसलाई चाहान्छौं त्यसको मर्यादा बढाई दिन्छौं । प्रत्येक ज्ञाता माथि अर्को ज्ञानवान हुन्छ ।

قَالُوْۤا اِنْ يَّسْرِقْ فَقَدْ سَرَقَ اَخٌ لَّهٗ مِنْ قَبْلُ ۚ
فَاَسَرَّهَا يُوْسُفُ فِيْ نَفْسِهٖ وَلَمْ يُبْدِهَا لَهُمْ ۚ
قَالَ اَنْتُمْ شَرٌّ مَّكَانًا ۚ وَاللّٰهُ اَعْلَمُ بِمَا تَصِفُوْنَ ﴿٧٧﴾

७७) उनीहरूले भनें: कि यदि उसले चोरी गर्‍यो भने (कुनै आश्चर्यको कुरा होइन) त्यस भन्दा अगावै उसको दाजुले पनि चोरी गरी सकेको छ यूसुफले यस कुरालाई आफ्नो मुट्टमै राखी लिए र त्यस कुरालाई उनका अगाडि बिल्कुलै

प्रकट गरेनन्, भने: कि तिमी खराब ठाँउमा छौ, र जुन तिमी बयान गर्दछौ उसलाई अल्लाह नै सूक्ष्म रूपले बेसरी जान्दछ ।

قَالُوْا يٰٓاَيُّهَا الْعَزِيْزُ اِنَّ لَهٗٓ اَبًا شَيْخًا كَبِيْرًا فَخُذْ اَحَدَنَا مَكَانَهٗ ۚ اِنَّا نَرٰىكَ مِنَ الْمُحْسِنِيْنَ ﴿٧٨﴾

७८) उनीहरूले भने: हे आज़िज़े मिश्र (यूसुफ !) उसको पिता लामो उमेरको निकै पाको वृद्ध व्यक्ति हुनुहुन्छ - तपाई यसको सट्टा हामी मध्येबाट कसैलाई लिई लिनुहोस् हामी देख्दछौ कि तपाई धेरै पवित्र आत्मा हुनुहुन्छ ।

قَالَ مَعَاذَ اللّٰهِ اَنْ نَّاْخُذَ اِلَّا مَنْ وَّجَدْنَا مَتَاعَنَا عِنْدَهٗٓ ۙ اِنَّآ اِذًا لَّظٰلِمُوْنَ ﴿٧٩﴾

७९) यूसुफले भने कि मैले जस सँग आफ्नो वस्तु पाएको छुं उस वाहेक कसैलाई गिरफ्तारी गर्नाले अल्लाहको आज्ञा उल्लघंनबाट बच्न चाहन्छु । यदि यस्तै गरेको भए म नि:सन्देह अन्यायकारी हुनेछु ।

فَلَمَّا اسْتَيْـَٔسُوْا مِنْهُ خَلَصُوْا نَجِيًّا ۗ قَالَ كَبِيْرُهُمْ اَلَمْ تَعْلَمُوْٓا اَنَّ اَبَاكُمْ قَدْ اَخَذَ عَلَيْكُمْ مَّوْثِقًا مِّنَ اللّٰهِ وَمِنْ قَبْلُ مَا فَرَّطْتُّمْ فِيْ يُوْسُفَ ۚ فَلَنْ اَبْرَحَ الْاَرْضَ حَتّٰى يَاْذَنَ لِيْٓ اَبِيْٓ اَوْ يَحْكُمَ اللّٰهُ لِيْ ۚ وَهُوَ خَيْرُ الْحٰكِمِيْنَ ﴿٨٠﴾

८०) जब यसबाट उनी निराश भए, तब एकान्तमा बसेर सल्लाह गर्न लागे त्यसमध्ये जो सबैमा जेष्ठ थियो त्यसले भन्यो'' तिमीलाई थाहा छैन की पिताले तिमीबाट अल्लाहको कसम लिएर पुन: प्रतिज्ञा गराएका छन्, र त्यस भन्दा अगाडि यूसुफको बारेमा तिमी भूल गरिसकेका छौ । फेरि म त्यस राष्ट्रबाट जाँदिन जब सम्मकि पिता जी आफै मलाई इजाजत नदिऊन, वा अल्लाह नै मेरो बारेमा फैसला गरोस् । त्यो नै असल फैसला गर्ने वाला हो ।

ارْجِعُوٓا اِلٰٓى اَبِيْكُمْ فَقُوْلُوْا يٰٓاَبَانَآ اِنَّ ابْنَكَ سَرَقَ ۚ وَمَا شَهِدْنَآ اِلَّا بِمَا عَلِمْنَا وَمَا كُنَّا لِلْغَيْبِ حٰفِظِيْنَ ﴿٨١﴾

८१) तिमी सबै पिताजी को सेवामा फिर्ता वापस जाऊ र भन: "कि पिताजी ! तपाईको पुत्रले चोरी गर्‍यो र हामीले त्यही गवाही दिएका थियौ जुन हामीलाई थाहा थियो हामीलाई आन्तरीक कुरो ज्ञात थिएन" ।

وَسْـَٔلِ الْقَرْيَةَ الَّتِيْ كُنَّا فِيْهَا وَالْعِيْرَ الَّتِيْٓ اَقْبَلْنَا فِيْهَا ۗ وَاِنَّا لَصٰدِقُوْنَ ﴿٨٢﴾

८२) तपाई त्यस नगरका नगरवासीहरू संग सोधपूछ गरीलिनुहोस् जहाँ, हामी थियौं र त्यस समूहसँग पनि सोधिलिनुहोस् जस सँग हामी आएका छौं र वस्तुत: हामी बिल्कुलै सत्यनिष्ठि छौं ।

قَالَ بَلْ سَوَّلَتْ لَكُمْ اَنْفُسُكُمْ اَمْرًا ۗ فَصَبْرٌ جَمِيْلٌ ۗ عَسَى اللّٰهُ اَنْ يَّاْتِيَنِيْ بِهِمْ جَمِيْعًا ۗ اِنَّهٗ هُوَ الْعَلِيْمُ الْحَكِيْمُ ﴿٨٣﴾

८३) (याकूबले) भने यो त होइन, कि तिमीहरूले आफ्नो तर्फबाट कुरो बनायौ । फेरि अब धैर्य नै वेश हुनेछ नजिक छ कि अल्लाह उनी सबैलाई मेरो नजिक नै पुर्‍याई देओस् नि:सन्देह त्यो अति ज्ञानी र कौशल सम्पन्न छ ।"

وَتَوَلّٰى عَنْهُمْ وَقَالَ يٰٓاَسَفٰى عَلٰى يُوْسُفَ وَابْيَضَّتْ عَيْنٰهُ مِنَ الْحُزْنِ فَهُوَ كَظِيْمٌ ﴿٨٤﴾

८४) फेरि उनीबाट आफ्नो मुख फर्काई लिए, र भने: हाय यूसुफ ! हार्दिक शोक र दु:खको कारण उनका आँखा एकदमै सेतो भइसकेका थिए र उनी शोकलाई थिची राखेका थिए ।

قَالُوْا تَاللّٰهِ تَفْتَؤُا تَذْكُرُ يُوْسُفَ حَتّٰى تَكُوْنَ حَرَضًا اَوْ تَكُوْنَ مِنَ الْهٰلِكِيْنَ ﴿٨٥﴾

८५) छोराहरूले भने: अल्लाहको शपथ ! तपाईं सदैव यूसुफको सम्झनामै लागि रहनु हुनेछ । यहां सम्म कि तपाई जीर्ण हुनु हुनेछ अथवा समाप्त भई जानु हुनेछ ।

قَالَ اِنَّمَاۤ اَشْكُوْا بَثِّيْ وَحُزْنِيْۤ اِلَى اللّٰهِ وَاَعْلَمُ
مِنَ اللّٰهِ مَا لَا تَعْلَمُوْنَ ﴿٨٦﴾

८६) उहाँले भन्नु भयोः कि, मैले त आफ्नो शोक र कठिनाईको अल्लाहसँग पुकार गरी रहेको छुँ, मलाई अल्लाहको तर्फबाट त्यो कुरो ज्ञात छ, जुन तिमीलाई थाहा छैन ।

يٰبَنِيَّ اذْهَبُوْا فَتَحَسَّسُوْا مِنْ يُّوْسُفَ وَاَخِيْهِ
وَلَا تَايْـَٔسُوْا مِنْ رَّوْحِ اللّٰهِ ؕ اِنَّهٗ لَا يَايْـَٔسُ مِنْ
رَّوْحِ اللّٰهِ اِلَّا الْقَوْمُ الْكٰفِرُوْنَ ﴿٨٧﴾

८७) मेरा प्यारा पुत्रहरू ! तिमी जाऊ र यूसुफलाई र उसको भाइलाई पूर्ण रूपेण खोज गर । र अल्लाहको अनुकम्पाबाट निराश नबन, निश्चित रूपले पालनकर्ताको अनुकम्पाबाट उनै निराश हुन्छन् जो काफ़िर हुन्छन् ।

فَلَمَّا دَخَلُوْا عَلَيْهِ قَالُوْا يٰۤاَيُّهَا الْعَزِيْزُ مَسَّنَا
وَاَهْلَنَا الضُّرُّ وَجِئْنَا بِبِضَاعَةٍ مُّزْجٰىةٍ فَاَوْفِ
لَنَا الْكَيْلَ وَتَصَدَّقْ عَلَيْنَا ؕ اِنَّ اللّٰهَ يَجْزِي
الْمُتَصَدِّقِيْنَ ﴿٨٨﴾

८८) फेरि यिनीहरू जब यूसुफनिर पुगे, अनि भन्न थालेः “हे अज़िज ! हामीलाई र हाम्रो परिवारलाई दुःख पुगेको छ, हामी सानो पूँजी लिएर आएका छौं, हामीलाई पूरै खाद्यान्न नापी दिनुस्, र हामी माथि दान गर्नुहोस्, अल्लाह दान गर्नेवालाहरूलाई राम्रो फल दिन्छ ।

قَالَ هَلْ عَلِمْتُمْ مَّا فَعَلْتُمْ بِيُوْسُفَ وَاَخِيْهِ
اِذْ اَنْتُمْ جٰهِلُوْنَ ﴿٨٩﴾

८९) यूसुफले भने जान्दछौ ? तिमीले यूसुफ र उसका भाइको साथ आफ्नो अज्ञानताको अवस्थामा के गरेका छौ ?

قَالُوْۤا ءَاِنَّكَ لَاَنْتَ يُوْسُفُ ؕ قَالَ اَنَا يُوْسُفُ
وَهٰذَاۤ اَخِيْ ؗ قَدْ مَنَّ اللّٰهُ عَلَيْنَا ؕ اِنَّهٗ مَنْ
يَّتَّقِ وَيَصْبِرْ فَاِنَّ اللّٰهَ لَا يُضِيْعُ اَجْرَ
الْمُحْسِنِيْنَ ﴿٩٠﴾

९०) उनीहरूले भनेः के तिमीनै यूसुफ हौ । उत्तर दियो कि हो म नै यूसुफ हूँ र यो मेरो भाइ हो, अल्लाहले हामी माथि दया गरेको छ, कुरो यो छ कि जो पनि धैर्य धारण र

सहनशिलता ग्रहण गर्छ, त अल्लाह कुनै पुण्य कारकलाई पुरस्कारबाट वञ्चित गर्दैन ।

قَالُوا تَاللَّهِ لَقَدْ آثَرَكَ اللَّهُ عَلَيْنَا وَإِن كُنَّا لَخَاطِئِينَ ﴿٩١﴾

९१) उनीहरूले भने: अल्लाहको कसम, अल्लाहले तिमीलाई हामी भन्दा उच्चदर्जा प्रदान गरेको छ, र यो कि हामीनै अपराधी थियौं ।

قَالَ لَا تَثْرِيبَ عَلَيْكُمُ الْيَوْمَ يَغْفِرُ اللَّهُ لَكُمْ وَهُوَ أَرْحَمُ الرَّاحِمِينَ ﴿٩٢﴾

९२) उत्तर दिए "आज तिमी माथि कुनै दोषारोपण छैन अल्लाह तिमी हरूलाई क्षमागरोस्, ऊ सबै दयालु भन्दा ठूलो दयावान छ ।"

اذْهَبُوا بِقَمِيصِي هَٰذَا فَأَلْقُوهُ عَلَىٰ وَجْهِ أَبِي يَأْتِ بَصِيرًا وَأْتُونِي بِأَهْلِكُمْ أَجْمَعِينَ ﴿٩٣﴾

९३) मेरो यो कमिज तिमी लैजाऊ र त्यसलाई मेरो पिताको मुख माथि राखीदेऊ: कि उनी हेर्न लागुन्, र आफ्नो सबै सन्ततिलाई मेरो नजिक लिएर आऊ ।

وَلَمَّا فَصَلَتِ الْعِيرُ قَالَ أَبُوهُمْ إِنِّي لَأَجِدُ رِيحَ يُوسُفَ لَوْلَا أَن تُفَنِّدُونِ ﴿٩٤﴾

९४) जब यो समूह अलग भयो (प्रस्थान गऱ्यो) तब उनको पिताले भन्नु भयो मलाई त यूसुफको सुगन्ध आइरहेको छ, यदि तिमीले मलाई कर्तब्य विमुढ़ नभन्ने हौ भने ।

قَالُوا تَاللَّهِ إِنَّكَ لَفِي ضَلَالِكَ الْقَدِيمِ ﴿٩٥﴾

९५) उनीहरूले भन्न थाले: अल्लाह कसम तपाई आफ्नो उही पुरानो कल्पना मै मग्न हुनु हुन्छ ।

فَلَمَّا أَن جَاءَ الْبَشِيرُ أَلْقَاهُ عَلَىٰ وَجْهِهِ فَارْتَدَّ بَصِيرًا قَالَ أَلَمْ أَقُل لَّكُمْ إِنِّي أَعْلَمُ مِنَ اللَّهِ مَا لَا تَعْلَمُونَ ﴿٩٦﴾

९६) जब शुभ सन्देश दिनेहरू पुगेर उनको मुख माथि त्यो "कमिज" हाली दिए त्यसै बेला उनका आखाँ ज्योतिमय भए भने ! के म तिमी

संग भन्दैन्थे कि म अल्लाहको तर्फबाट त्यो कुरो जान्दछु जुन तिमीलाई थाहा छैन ।

قَالُوا يَا أَبَانَا اسْتَغْفِرْ لَنَا ذُنُوبَنَا إِنَّا كُنَّا خَاطِئِينَ ﴿٩٧﴾

९७) उनीहरूले भने : "पिता जी ! हाम्रो अपराध क्षमाको लागि (अल्लाहसंग) प्रार्थना गर्नुस् बेशक हामी कसूरवार छौं ।

قَالَ سَوْفَ أَسْتَغْفِرُ لَكُمْ رَبِّي ۖ إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ﴿٩٨﴾

९८) भनेः "म छिटै तिम्रोलागि आफ्नो अल्लाहबाट क्षमादान मागूँला । ऊ ठूलो क्षमादान दिनेवाला र अत्यन्त दया गर्नेवाला छ ।"

فَلَمَّا دَخَلُوا عَلَىٰ يُوسُفَ آوَىٰ إِلَيْهِ أَبَوَيْهِ وَقَالَ ادْخُلُوا مِصْرَ إِن شَاءَ اللَّهُ آمِنِينَ ﴿٩٩﴾

९९) जब यो पूरा खानदान यूसुफनिर पुग्यो, तब यूसुफले आफ्नो आमा-बुबालाई आफ्नो नजिक ठाँउ दिए र भने "कि अल्लाहलाई स्वीकार छ भने तपाईहरू शान्तिका साथ मिश्रमा आउनुहोस्" ।

وَرَفَعَ أَبَوَيْهِ عَلَى الْعَرْشِ وَخَرُّوا لَهُ سُجَّدًا ۖ وَقَالَ يَا أَبَتِ هَٰذَا تَأْوِيلُ رُؤْيَايَ مِن قَبْلُ قَدْ جَعَلَهَا رَبِّي حَقًّا ۖ وَقَدْ أَحْسَنَ بِي إِذْ أَخْرَجَنِي مِنَ السِّجْنِ وَجَاءَ بِكُم مِّنَ الْبَدْوِ مِن بَعْدِ أَن نَّزَغَ الشَّيْطَانُ بَيْنِي وَبَيْنَ إِخْوَتِي ۚ إِنَّ رَبِّي لَطِيفٌ لِّمَا يَشَاءُ ۚ إِنَّهُ هُوَ الْعَلِيمُ الْحَكِيمُ ﴿١٠٠﴾

१००) र आफ्ना बा, आमालाई उच्च आसनमा बसाले र सबै उनका अगाडी नत्मस्तक भईगए, र भने पिता जी ! "यो मेरो पहिलेको सपना साकार भएको हो । मेरो रबले उसलाई सत्य साबित गरी देखाई दियो । उसले मेरो साथ ठूलो उपकार गऱ्यो, उसले कारागरबाट मलाई निकाल्यो, र तपाईहरूलाई गाँउबस्तीबाट ल्याई दियो । यस घटना पछि जो शैतानले ममा र मेरा भाइहरूमा

फूट हालेको थियो, मेरो पालनकर्ताले जे चाहन्छ उसको लागि राम्रो उपाय गर्दछ । र ऊ ठूलो ज्ञानी र तत्वदर्शी छ ।

१०१) हे मेरो पलनकर्ता ! तिमीले मलाई राष्ट्र प्रदान गऱ्यो र तिमीले मलाई सपनालाई विश्लेषण गर्न सीप सिकाई दियौ, हे पृथ्वी र आकाशको निर्माता ! तिमी नै दुनियाँ र अन्त्यमा मेरो संरक्षक हौ । तिमी मलाई इस्लामको अवस्था मै मृत्यु देऊ, र सत्यकर्मीहरूमा शम्मिलित गर ।

رَبِّ قَدْ اٰتَيْتَنِيْ مِنَ الْمُلْكِ وَعَلَّمْتَنِيْ مِنْ تَاْوِيْلِ الْاَحَادِيْثِ ۚ فَاطِرَ السَّمٰوٰتِ وَالْاَرْضِ ۟ اَنْتَ وَلِيّٖ فِي الدُّنْيَا وَالْاٰخِرَةِ ۚ تَوَفَّنِيْ مُسْلِمًا وَّاَلْحِقْنِيْ بِالصّٰلِحِيْنَ ۝١٠١

१०२) यो गोप्य सूचनाहरू मध्ये छ, जसको हामी तपाईको तर्फ सन्देशित गरी रहेका छौं, र तपाई उनीहरू नजिक थिएनौ जबकि उनीहरूले आफ्नो सबै उपाय गरेपछि (यूसुफको खिलाफ) षडयंत्र गर्न लागेका थिए ।

ذٰلِكَ مِنْ اَنْۢبَآءِ الْغَيْبِ نُوْحِيْهِ اِلَيْكَ ۚ وَمَا كُنْتَ لَدَيْهِمْ اِذْ اَجْمَعُوْٓا اَمْرَهُمْ وَهُمْ يَمْكُرُوْنَ ۝١٠٢

१०३) तपाईले जति चाहे पनि सबै ईमान्दार हुन सक्दैनन् ।

وَمَآ اَكْثَرُ النَّاسِ وَلَوْ حَرَصْتَ بِمُؤْمِنِيْنَ ۝١٠٣

१०४) तपाईंले यसको साटो कुनै पारितोषिक माँगीरहनु भएको छैन यो त सम्पूर्ण संसारको लागि खुल्लम खुल्ला निर्देशन हो ।

وَمَا تَسْـَٔلُهُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۭ اِنْ هُوَ اِلَّا ذِكْرٌ لِّلْعٰلَمِيْنَ ۝١٠٤

१०५) आकाश र पृथ्वीमा धेरै चिन्हहरू छन्, जसबाट यिनीहरू मुख फर्काएर अगाडि गइहाल्छन् ।

وَكَاَيِّنْ مِّنْ اٰيَةٍ فِي السَّمٰوٰتِ وَالْاَرْضِ يَمُرُّوْنَ عَلَيْهَا وَهُمْ عَنْهَا مُعْرِضُوْنَ ۝١٠٥

१०६) तिनीहरूमध्ये अधिकांश व्यक्ति

وَمَا يُؤْمِنُ اَكْثَرُهُمْ بِاللّٰهِ اِلَّا وَهُمْ مُّشْرِكُوْنَ ۝١٠٦

अल्लाहमा ईमानवाला नभई मुश्रिक नै हुन् ।

أَفَأَمِنُوٓا۟ أَن تَأْتِيَهُمْ غَٰشِيَةٌ مِّنْ عَذَابِ ٱللَّهِ أَوْ تَأْتِيَهُمُ ٱلسَّاعَةُ بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ ﴿١٠٧﴾

१०७) के तिनीहरू यस कुराबाट निडर भइसकेका छन्, कि उनीसँग अल्लाहको सजायहरू मध्ये कुनै सजाय आइलागोस्, अथवा उनीमाथि एक्कासी कयामतको दिन आई परोस् र उनीहरू अन्जान नै बनी रहुन् ।

قُلْ هَٰذِهِۦ سَبِيلِىٓ أَدْعُوٓا۟ إِلَى ٱللَّهِ ۚ عَلَىٰ بَصِيرَةٍ أَنَا۠ وَمَنِ ٱتَّبَعَنِى ۖ وَسُبْحَٰنَ ٱللَّهِ وَمَآ أَنَا۠ مِنَ ٱلْمُشْرِكِينَ ﴿١٠٨﴾

१०८) तपाई भनि दिनुस् ! मेरो बाटो यही छ म र मेरो आदेश पालकहरू अल्लाहतिर बोलाइरहेका छौं, पूरै विश्वास र भरोसाको साथ, र अल्लाह पवित्र हुन्, र म मुश्रिकहरू मध्ये होइन ।

وَمَآ أَرْسَلْنَا مِن قَبْلِكَ إِلَّا رِجَالًا نُّوحِىٓ إِلَيْهِم مِّنْ أَهْلِ ٱلْقُرَىٰٓ ۗ أَفَلَمْ يَسِيرُوا۟ فِى ٱلْأَرْضِ فَيَنظُرُوا۟ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلَّذِينَ مِن قَبْلِهِمْ ۗ وَلَدَارُ ٱلْءَاخِرَةِ خَيْرٌ لِّلَّذِينَ ٱتَّقَوْا۟ ۗ أَفَلَا تَعْقِلُونَ ﴿١٠٩﴾

१०९) तपाईं भन्दा पहिले मैले गाँउलेहरूमा जति पैगम्बर पठाएँ, सबै पुरुष नै थिए । उनीहरू तर्फ मैले सन्देश (वह्य) दिदै गएँ । के तिनीहरू पृथ्वीमा हिलडुल गरेर देखेनन् ? कि उनी भन्दा पहिलेका ब्यक्तिहरूको के कस्तो नतीजा भयो । वास्तवमा अन्तिम घर सहनशीलहरूको लागि धेरै राम्रा छन् । तै पनि तिनी सम्झन सक्तैनन् ।

حَتَّىٰٓ إِذَا ٱسْتَيْـَٔسَ ٱلرُّسُلُ وَظَنُّوٓا۟ أَنَّهُمْ قَدْ كُذِبُوا۟ جَآءَهُمْ نَصْرُنَا فَنُجِّىَ مَن نَّشَآءُ ۖ وَلَا يُرَدُّ بَأْسُنَا عَنِ ٱلْقَوْمِ ٱلْمُجْرِمِينَ ﴿١١٠﴾

११०) यहाँ सम्म कि जब पैगम्बर निराश हुन लाग्नु भयो र त्यस कौमका मानिसहरू सोच्न लागे कि, उनीलाई झूठो भनियोस्, तुरुन्त नै हाम्रो सहयोग उनी निर आई पुग्यो ।

जसलाई मैले चाहें त्यसलाई मुक्ति दिएँ कुरो यो छ कि हाम्रो सजाय अपराधीहरूवाट फिर्ता आउँदैन ।

१११) निश्चयनै उनको वर्णनमा बुद्धिमानहरूको लागि शिक्षा र सुझाव छन् । यो कुरआन झूठो बनाएको कुरो होइन । बल्कि यो प्रमाणित गर्दछ , ती पुस्तकहरूको जुन यस भन्दा अगाडिका छन् । र खुल्लारूपमा बयान गर्ने वाला छ हरेक वस्तुको, र निर्देशन र रहमत छ ईमानदार मान्छेहरूका लागि ।

لَقَدْ كَانَ فِي قَصَصِهِمْ عِبْرَةٌ لِّأُولِي الْأَلْبَابِ ۗ مَا كَانَ حَدِيثًا يُفْتَرَىٰ وَلَٰكِن تَصْدِيقَ الَّذِي بَيْنَ يَدَيْهِ وَتَفْصِيلَ كُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ﴿١١١﴾



# सूरतु रअद-१३




सूरतु रअद मदनी हो, र यसमा ४३ आयतहरू र ६ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्त दयालु र ठूलो कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ, लाम, मिम, रा- यी कुरआनका आयत हुन्, र जुन सुकै तपाई तर्फ तपाईको पालनहारबाट उत्तारिएकोछ, सबै सत्य हुन् । तापनि अधिकांश व्यक्तिहरू ईमान ल्याउदैनन् ।

الٓمّٓرٰ ۫ تِلْكَ اٰيٰتُ الْكِتٰبِ ؕ وَالَّذِيْٓ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ الْحَقُّ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يُؤْمِنُوْنَ ﴿١﴾

२) अल्लाह त्यो नै हो जसले आकाशहरूलाई बिना खम्बा ठड्याइ दिएको छ, जसलाई तिमी देखी रहेका छौ, फेरि ऊ अर्श (सिंहासन) माथि उच्च छ । उसैले सूर्य र चन्द्रलाई आफ्नो अधीनमा राखी राखेको छ । हरेक निश्चित प्रक्रियामा गतिशील छन्, उसैले सबै कार्यको उपाय गर्छ । उसले आफ्ना प्रमाण-प्रतीकहरू स्पष्टरूपमा बयान गरीरहेको छ, कि तिमी आफ्नो पालनहारसँगको भेटलाई विश्वास गरी हाल ।

اَللّٰهُ الَّذِيْ رَفَعَ السَّمٰوٰتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ؕ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ؕ يُدَبِّرُ الْاَمْرَ يُفَصِّلُ الْاٰيٰتِ لَعَلَّكُمْ بِلِقَآءِ رَبِّكُمْ تُوْقِنُوْنَ ﴿٢﴾

३) उसैले धर्ती फैलाएर ओछ्याई दिएको छ, र त्यसमा पहाड़ र खोलाहरू निर्माण गरिदिएको छ, र त्यसमा किसिम किसिमका फल-फूलहरूका जोडा-जोडा दोहोरो-दोहोरो उत्पन्न

وَهُوَ الَّذِيْ مَدَّ الْاَرْضَ وَجَعَلَ فِيْهَا رَوَاسِيَ وَاَنْهٰرًا ؕ وَمِنْ كُلِّ الثَّمَرٰتِ جَعَلَ فِيْهَا زَوْجَيْنِ اثْنَيْنِ يُغْشِي الَّيْلَ النَّهَارَ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٣﴾

गरिदिएको छ । उसैले रातलाई दिनबाट छिपाई दिन्छ, निःसंन्देह सोच्ने, बुझ्नेहरूका लागि यसमा धेरै (प्रतीक) चिन्हहरू छन् ।

وَفِي الْأَرْضِ قِطَعٌ مُّتَجٰوِرٰتٌ وَّجَنّٰتٌ مِّنْ اَعْنَابٍ وَّزَرْعٌ وَّنَخِيْلٌ صِنْوَانٌ وَّغَيْرُ صِنْوَانٍ يُّسْقٰى بِمَآءٍ وَّاحِدٍ وَنُفَضِّلُ بَعْضَهَا عَلٰى بَعْضٍ فِي الْاُكُلِ ۚ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ۝٤

४) र पृथ्वीमा भिन्न-भिन्न प्रकारका टुक्रा एक अर्का संग मिल्दा जुल्दा छन् । र अंगूरका बगैचाहरू छन्, र खेतहरू छन्, र खजूरका बोटहरू छन, हाङ्गा भएका र कुनै यस्ता छन् जसमा कुनै हाङ्गा छैनन्, सबैलाई एउटै पानी पिलाइन्छ, तैपनि म एउटालाई अर्को फल माथि उच्चता प्रदान गर्दछु । यसमा वुद्धिमानहरूका लागि धेरै चिन्हहरू छन् ।

وَاِنْ تَعْجَبْ فَعَجَبٌ قَوْلُهُمْ ءَاِذَا كُنَّا تُرٰبًا ءَاِنَّا لَفِيْ خَلْقٍ جَدِيْدٍ ۗ اُولٰٓئِكَ الَّذِيْنَ كَفَرُوْا بِرَبِّهِمْ ۚ وَاُولٰٓئِكَ الْاَغْلٰلُ فِيْٓ اَعْنَاقِهِمْ ۚ وَاُولٰٓئِكَ اَصْحٰبُ النَّارِ ۚ هُمْ فِيْهَا خٰلِدُوْنَ ۝٥

५) यदि तिमीलाई आश्चर्य लाग्छ भने वास्तवमा उनको यो भनाई अजीब छ कि जब हामी माटो भइहाल्छौं तब के हामी नयाँ जन्ममा हुनेछौं । यिनीहरू नै हुन् जसले आफ्ना पालनहार माथि कुफ्र गरेका छन् , यही नै हुन जसका घाँटीहरूमा पापी पट्टा हुनेछन् र यही नै हुन् जो नर्क (जन्नहम) मा रहनेवाला हुन् । जो यसमा संधै संधैका लागि रहनेछन् ।

وَيَسْتَعْجِلُوْنَكَ بِالسَّيِّئَةِ قَبْلَ الْحَسَنَةِ وَقَدْ خَلَتْ مِنْ قَبْلِهِمُ الْمَثُلٰتُ ۗ وَاِنَّ رَبَّكَ لَذُوْ مَغْفِرَةٍ لِّلنَّاسِ عَلٰى ظُلْمِهِمْ ۚ وَاِنَّ رَبَّكَ لَشَدِيْدُ الْعِقَابِ ۝٦

६) र जो तिमीबाट (दण्डको प्राप्तिमा) छिटो गरिरहेका छन् राहत भन्दा अगावै नै, जब कि उहाँ भन्दा अगाडि धेरै शिक्षाप्रद उदाहरण आई सकेको छ । र तिम्रो पालनहार मुक्ति

दिनेवाला छ, मान्छेहरूको नचाहिँदो अपराधमा पनि र यो पनि निश्चित कुरो छ, कि तिम्रो पालनकर्ताले भयंकर दण्ड दिने वाला छ ।

७) र काफिरहरू भन्दछन्: कि उनीमाथि उनको पालनकर्ताको तर्फबाट कुनै चमत्कार किन उतारिएना कुरो यो छ: कि तपाईं त मात्र सावधान गर्नेवाला हुनुहुन्छ, र हरेक कौमका लागि (एउटा) मार्गदर्शक छ ।

وَيَقُوْلُ الَّذِيْنَ كَفَرُوْا لَوْلَآ اُنْزِلَ عَلَيْهِ اٰيَةٌ مِّنْ رَّبِّهٖ ؕ اِنَّمَآ اَنْتَ مُنْذِرٌ وَّ لِكُلِّ قَوْمٍ هَادٍ ۝

८) अल्लाह राम्ररी जान्दछ जे स्त्रीको गर्भमा रहन्छ र भूडी़को ठूलो सानो आकार पनि, र हर वस्तु उस निर एउटा निश्चित रूपमा छ ।

اَللّٰهُ يَعْلَمُ مَا تَحْمِلُ كُلُّ اُنْثٰى وَمَا تَغِيْضُ الْاَرْحَامُ وَمَا تَزْدَادُ ؕ وَكُلُّ شَيْءٍ عِنْدَهٗ بِمِقْدَارٍ ۝

९) त्यो प्रत्यक्ष तथा परोक्षको ज्ञाता हो । (सबै भन्दा) महान र (सबैभन्दा) उच्चतम छ ।

عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْكَبِيْرُ الْمُتَعَالِ ۝

१०) तिमी मध्ये कसैले आफ्नो कुरोलाई लुकाएर भनोस् अथवा ठूलो स्वरमा भनोस् र जुन रात्रीमा लुकेको छ र जुन दिउँसोमा भई रहेको छ, सबै अल्लाहका लागि एकैनास छन् ।

سَوَآءٌ مِّنْكُمْ مَّنْ اَسَرَّ الْقَوْلَ وَمَنْ جَهَرَ بِهٖ وَمَنْ هُوَ مُسْتَخْفٍ بِالَّيْلِ وَسَارِبٌۢ بِالنَّهَارِ ۝

११) उसका चौकीदारहरू मान्छेका अगाडि-पाछाडि नियुक्त छन्, जो अल्लाहको हुकुम अनुसार त्यसको चौकसी गर्दछन् । कुनै समुदायको अवस्था अल्लाह बदल्दैन जब सम्म कि त्यसले स्वयं उसलाई न बदलोस्, जो उसका हृदयमा छन् र अल्लाह

لَهٗ مُعَقِّبٰتٌ مِّنْۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهٖ يَحْفَظُوْنَهٗ مِنْ اَمْرِ اللّٰهِ ؕ اِنَّ اللّٰهَ لَا يُغَيِّرُ مَا بِقَوْمٍ حَتّٰى يُغَيِّرُوْا مَا بِاَنْفُسِهِمْ ؕ وَاِذَآ اَرَادَ اللّٰهُ بِقَوْمٍ سُوْٓءًا فَلَا مَرَدَّ لَهٗ ۚ وَمَا لَهُمْ مِّنْ دُوْنِهٖ مِنْ وَّالٍ ۝

जब कुनै समुदायलाई दण्डित गर्ने योजना बनाउँछ, त्यो परिवर्तन हुँदैन । र उसबाहेक कोही पनि उसको योजनाकार छैन ।

هُوَالَّذِيْ يُرِيْكُمُ الْبَرْقَ خَوْفًا وَّطَمَعًا وَّيُنْشِئُ السَّحَابَ الثِّقَالَ ﴿١٢﴾

१२) त्यो अल्लाह नै हो जसले तिमीलाई चट्याङ्गको चमक भयभीत गर्न र आशा दिलाउनको लागि देखाउँछ, र भारी बादलहरूलाई उठाउँछ ।

وَيُسَبِّحُ الرَّعْدُ بِحَمْدِهٖ وَالْمَلٰٓئِكَةُ مِنْ خِيْفَتِهٖ ۚ وَيُرْسِلُ الصَّوَاعِقَ فَيُصِيْبُ بِهَا مَنْ يَّشَآءُ وَهُمْ يُجَادِلُوْنَ فِي اللّٰهِ ۚ وَهُوَ شَدِيْدُ الْمِحَالِ ﴿١٣﴾

१३) बिजुलीको गर्जना उसको पवित्रताको प्रशंसा गर्दछ, र फरिश्ताहरू पनि उसको भयबाट (त्यसै गर्दैछन्) । उही चट्याङ्ग पठाउँछ, र जस माथि चाहन्छ त्यस माथि खसाल्छ । जब कि तिनीहरू (बहुदेववादी) अल्लाहको वापत झैं-झगडा गरी रहेका छन्, र अल्लाह कठोर शक्तिवाला छ ।

لَهٗ دَعْوَةُ الْحَقِّ ۭ وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِهٖ لَا يَسْتَجِيْبُوْنَ لَهُمْ بِشَيْءٍ اِلَّا كَبَاسِطِ كَفَّيْهِ اِلَى الْمَآءِ لِيَبْلُغَ فَاهُ وَمَا هُوَ بِبَالِغِهٖ ۭ وَمَا دُعَآءُ الْكٰفِرِيْنَ اِلَّا فِيْ ضَلٰلٍ ﴿١٤﴾

१४) उसैलाई पुकार्नु वास्तविक सत्य छ । जुन मानिस अरुलाई उसको बदलामा पुकार्छन् तिनीहरू उनीलाई केही पनि उत्तर दिदैनन्, बरु यो उस्तै छ जस्तो कुनै व्यक्ति आफ्नो दुवै हात पानीतर्फ फैलाएको छ कि उसको मुखमा परिजाओस् जबकी त्यो पानी उसको मुखमा जाँदैन । र काफिरहरूको गुहार सबै खेर जान्छ ।

وَلِلّٰهِ يَسْجُدُ مَنْ فِي السَّمٰوٰتِ وَالْاَرْضِ طَوْعًا وَّكَرْهًا وَّظِلٰلُهُمْ بِالْغُدُوِّ وَالْاٰصَالِ ﴿١٥﴾

१५) अल्लाहको लागि नै पृथ्वी र आकाशका सबै प्राणीहरू खुशी र बेखुशी नतमस्तक हुन्छन् र उनका छायाँहरूले पनि विहान वेलुका ।

قُلْ مَنْ رَّبُّ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ قُلِ اللّٰهُ ؕ قُلْ اَفَاتَّخَذْتُمْ مِّنْ دُوْنِهٖۤ اَوْلِيَآءَ لَا يَمْلِكُوْنَ لِاَنْفُسِهِمْ نَفْعًا وَّلَا ضَرًّا ؕ قُلْ هَلْ يَسْتَوِى الْاَعْمٰى وَالْبَصِيْرُ ۙ اَمْ هَلْ تَسْتَوِى الظُّلُمٰتُ وَالنُّوْرُ ۚ اَمْ جَعَلُوْا لِلّٰهِ شُرَكَآءَ خَلَقُوْا كَخَلْقِهٖ فَتَشَابَهَ الْخَلْقُ عَلَيْهِمْ ؕ قُلِ اللّٰهُ خَالِقُ كُلِّ شَىْءٍ وَّهُوَ الْوَاحِدُ الْقَهَّارُ ﴿١٦﴾

१६) तपाईं सोध्नुस्: "कि आकाशहरू र पृथ्वीको पालनकर्ता को हो ?"। भनिदिनुस् ! "अल्लाह" । सोध्नुस्: ! "के तिमी फेरि पनि उसबाहेक अरुलाई सहयोगी बनाई रहेका छौ ? जो स्वयं आफ्नो जीव ज्यानको राम्रो नराम्रोबारे कुनै अख्तियारी राख्दैनन्" । सोधः "के अन्धो र आँखा वाला वराबर हुन सक्छन् ? के अन्धकार र प्रकाश समान हुन सक्छन् ? के जसलाई उनी अल्लाहको साझेदार ठहऱ्याई रहेका छन, उनले पनि अल्लाह जस्तै प्राणीहरू निर्माण गरेका छन्, जसले उनको दृष्टिमा निर्माणका फर्क शंकाको घेरा भित्र आइसकेको छ", भनिदिनुस्: "मात्र अल्लाह नै सबै प्राणीहरूको जन्मदाता हो त्यो एक मात्र एक्लो छ र विशाल शक्तिशाली छ ।"

اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَسَالَتْ اَوْدِيَةٌۢ بِقَدَرِهَا فَاحْتَمَلَ السَّيْلُ زَبَدًا رَّابِيًا ؕ وَمِمَّا يُوْقِدُوْنَ عَلَيْهِ فِى النَّارِ ابْتِغَآءَ حِلْيَةٍ اَوْ مَتَاعٍ زَبَدٌ مِّثْلُهٗ ؕ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ الْحَقَّ وَالْبَاطِلَ ؕ فَاَمَّا الزَّبَدُ فَيَذْهَبُ جُفَآءً ۚ وَاَمَّا مَا يَنْفَعُ النَّاسَ فَيَمْكُثُ فِى الْاَرْضِ ؕ كَذٰلِكَ يَضْرِبُ اللّٰهُ الْاَمْثَالَ ﴿١٧﴾

१७) उसैले आकाशबाट पानी वर्सायो फेरि आफ्नो-आफ्नो क्षमता अनुसार खोलाहरू बग्न थाले, फेरि पानीको भेलले माथि चढेको कूडालाई बगाएर लग्यो । र यस्तै फींज त्यस धातुमा पनि उठीहाल्छ जुन आगोमा हालेर खारिए पछि आभूषण वा अर्को (सजावटका) समान बन्दछन् । यस्तै किसिमले अल्लाह सत्य-असत्यको उदाहरण प्रस्तुत गर्दछ, । अब फीज त व्यर्थ भएर बगी हाल्छ, परन्तु

जुन मान्छेलाई फाइदा पुऱ्याउने वस्तु छ, त्यो पृथ्वीमा अडी रहन्छ । अल्लाह यस्तै उदाहरणको वर्णन गर्दछ ।

لِلَّذِيْنَ اسْتَجَابُوْا لِرَبِّهِمُ الْحُسْنٰى ۗ وَالَّذِيْنَ لَمْ يَسْتَجِيْبُوْا لَهٗ لَوْ اَنَّ لَهُمْ مَّا فِى الْاَرْضِ جَمِيْعًا وَّمِثْلَهٗ مَعَهٗ لَافْتَدَوْا بِهٖ ۗ اُولٰٓئِكَ لَهُمْ سُوْٓءُ الْحِسَابِ ۙ وَمَاْوٰىهُمْ جَهَنَّمُ ۗ وَبِئْسَ الْمِهَادُ ﴿١٨﴾

१८) जुन मान्छेहरूले आफ्ना पालनहारको आदेशलाई पालन गरे तिनीहरूका लागि भलो हुनेछ, र जुन मान्छेहरूले उनको आदेशलाई अवहेलना गरे, यदि उनीहरूका लागि पृथ्वीमा रहेको सबै थोक र त्यति नै अरुभए पनि त्यो सबै आफ्नो मुक्तिको सट्टामा दिन तैयार हुन्छन् । तिनीहरूका लागि नर्क ठेगाना छ । र जुन ज्यादै नराम्रो ठाउँ हो ।

اَفَمَنْ يَّعْلَمُ اَنَّمَآ اُنْزِلَ اِلَيْكَ مِنْ رَّبِّكَ الْحَقُّ كَمَنْ هُوَ اَعْمٰى ۗ اِنَّمَا يَتَذَكَّرُ اُولُوا الْاَلْبَابِ ﴿١٩﴾

१९) के त्यो व्यक्ति जसले यो ज्ञान राख्दछ कि तपाईतिर तपाइको पालनकर्ताबाट जे उतारिएको छ त्यो सत्य छ, त्यस व्यक्ति जस्तो हुन सक्छ जुन अन्धो छ । उपदेश तिनैले स्वीकार गर्न सक्छन् जो ज्ञानी समभ्फदार छन् ।

الَّذِيْنَ يُوْفُوْنَ بِعَهْدِ اللّٰهِ وَلَا يَنْقُضُوْنَ الْمِيْثَاقَ ﴿٢٠﴾ ۙ

२०) जो अल्लाहको वाचालाई पूरा गर्दछन् र प्रतिज्ञा भंग गर्दैनन् ।

وَالَّذِيْنَ يَصِلُوْنَ مَآ اَمَرَ اللّٰهُ بِهٖٓ اَنْ يُّوْصَلَ وَيَخْشَوْنَ رَبَّهُمْ وَيَخَافُوْنَ سُوْٓءَ الْحِسَابِ ﴿٢١﴾

२१) र अल्लाहले जुन कुरोलाई जोड्ने आदेश दिएको छ उसलाई जोड्छन्, र उनी आफ्नो पालनहारबाट डराउँछन्, र कठिन हिसाबको भय राख्छन् ।

وَالَّذِيْنَ صَبَرُوا ابْتِغَآءَ وَجْهِ رَبِّهِمْ وَاَقَامُوا الصَّلٰوةَ وَاَنْفَقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً وَّيَدْرَءُوْنَ بِالْحَسَنَةِ السَّيِّئَةَ اُولٰٓئِكَ لَهُمْ عُقْبَى الدَّارِ ﴿٢٢﴾ ۙ

२२) र उनी आफ्नो पालनहारको सहमतिको चाहनाको पूर्तिका लागि धैर्य गर्छन, र नमाजलाई सदैव कायम राख्छन्,

र जुन कुरो मैले दिइ राखेको छु, त्यसलाई देखाई वा लुकाई खर्च गर्छन, र कुभलोलाई भलाईबाट फाल्छन् उनकैलागि अन्तिमका घर छन् ।

२३) सधैं रहनका लागि फूलबारी, जहाँ उनी स्वयं जान्छन, र उनका पुर्खा र पत्नीहरू र सन्तानहरू मध्येबाट जुन पुण्यआत्मा होलान्, र उनको नजिक फरिश्ताहरू प्रत्येक दैलोबाट आउनेछन् ।

جَنّٰتُ عَدْنٍ يَّدْخُلُوْنَهَا وَمَنْ صَلَحَ مِنْ اٰبَآئِهِمْ وَاَزْوَاجِهِمْ وَذُرِّيّٰتِهِمْ وَالْمَلٰٓئِكَةُ يَدْخُلُوْنَ عَلَيْهِمْ مِّنْ كُلِّ بَابٍ ﴿٢٣﴾

२४) भन्ने छन: कि तिमी माथि सलामती होस्'' जो तिमीहरूले धैर्य गर्नुभो र कति राम्रो प्रतिफल छ त्यो अन्तिम घर ।

سَلٰمٌ عَلَيْكُمْ بِمَا صَبَرْتُمْ فَنِعْمَ عُقْبَى الدَّارِ ﴿٢٤﴾

२५) र जसले अल्लाहको वाचा र आदेशलाई त्यसको बलियोपना पछि भंग गर्दछन् र जुन वस्तुलाई जोड्नका लागि अल्लाहले आदेश दिएको छ उसलाई तोड्छन् र पृथ्वीमा झैं झगडा फैलाउँछन्, उनका लागि तिरस्कारहरू छन् र उनकालागि खराब घर छ ।

وَالَّذِيْنَ يَنْقُضُوْنَ عَهْدَ اللّٰهِ مِنْۢ بَعْدِ مِيْثَاقِهٖ وَيَقْطَعُوْنَ مَآ اَمَرَ اللّٰهُ بِهٖٓ اَنْ يُّوْصَلَ وَيُفْسِدُوْنَ فِى الْاَرْضِ اُولٰٓئِكَ لَهُمُ اللَّعْنَةُ وَلَهُمْ سُوْٓءُ الدَّارِ ﴿٢٥﴾

२६) अल्लाहले जसको रोजी चाहन्छ बढाउँछ र जसको चाहन्छ घटाइ दिन्छ । यिनी त सांसरिक जीवनमा मस्त भइहाले । अत: दुनियाँ त अन्तिम प्रतिफलको तुलनामा अत्यन्तै तुच्छ छ ।

اَللّٰهُ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ وَفَرِحُوْا بِالْحَيٰوةِ الدُّنْيَا وَمَا الْحَيٰوةُ الدُّنْيَا فِى الْاٰخِرَةِ اِلَّا مَتَاعٌ ﴿٢٦﴾

وَيَقُولُ الَّذِينَ كَفَرُوا لَوْلَا أُنزِلَ عَلَيْهِ آيَةٌ مِّن رَّبِّهِ ۚ قُلْ إِنَّ اللَّهَ يُضِلُّ مَن يَشَاءُ وَيَهْدِي إِلَيْهِ مَنْ أَنَابَ ﴿٢٧﴾

२७) काफिर भन्दछन्: कि उनिमाथि उनिको पालनकर्ताबाट कुनै चिन्ह किन उतारिएन ? जवाफ दिनुस्: कि जसलाई अल्लाह बहकाउन चाहन्छ बहकाई दिन्छ, र जुन मानिस उस तर्फ झुके तिनलाई बाटो देखाई दिन्छ ।

الَّذِينَ آمَنُوا وَتَطْمَئِنُّ قُلُوبُهُم بِذِكْرِ اللَّهِ ۗ أَلَا بِذِكْرِ اللَّهِ تَطْمَئِنُّ الْقُلُوبُ ﴿٢٨﴾

२८) जुन मानिसहरूले ईमान ल्याए उनको हृदयमा अल्लाहको चर्चाबाट शान्तिको अनुभूति हुन्छ । सम्भिराख अल्लाहको चर्चाबाटै आत्मालाई शान्ति प्राप्त हुन्छ ।

الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ طُوبَىٰ لَهُمْ وَحُسْنُ مَآبٍ ﴿٢٩﴾

२९) जुन मानिसहरूले ईमान ल्याए र जसले असल काम गरे उनको लागि सम्पन्नता छ र अति सुन्दर ठेगाना पनि ।

كَذَٰلِكَ أَرْسَلْنَاكَ فِي أُمَّةٍ قَدْ خَلَتْ مِن قَبْلِهَا أُمَمٌ لِّتَتْلُوَ عَلَيْهِمُ الَّذِي أَوْحَيْنَا إِلَيْكَ وَهُمْ يَكْفُرُونَ بِالرَّحْمَٰنِ ۚ قُلْ هُوَ رَبِّي لَا إِلَٰهَ إِلَّا هُوَ عَلَيْهِ تَوَكَّلْتُ وَإِلَيْهِ مَتَابِ ﴿٣٠﴾

३०) (हे मोहम्मद स.) यस्तै मैले तपाईलाई यस समुदायमा पठाएको छु, जस भन्दा अगाडि धेरै समुदायहरू गुज्रि सकेका छन् । तपाईले उनीहरूलाई हाम्रो तर्फबाट- जो तपाईं माथि वह्य उतारिएको छ पढ़ेर सुनाउनुस् । यिनी रहमानका मुन्किर हुन् । तपाई भनिदिनुस् कि मेरो पालनकर्ता त उही हो र उसको सट्टा वास्तवमा कोही पनि उपासना योग्य छैन । उसै माथि मेरो भरोसा छ, र उसैतर्फ मैले फर्किनु छ ।

وَلَوْ أَنَّ قُرْآنًا سُيِّرَتْ بِهِ الْجِبَالُ أَوْ قُطِّعَتْ بِهِ الْأَرْضُ
أَوْ كُلِّمَ بِهِ الْمَوْتَىٰ ۗ بَل لِّلَّهِ الْأَمْرُ جَمِيعًا ۗ أَفَلَمْ يَيْأَسِ
الَّذِينَ آمَنُوا أَن لَّوْ يَشَاءُ اللَّهُ لَهَدَى النَّاسَ جَمِيعًا ۗ
وَلَا يَزَالُ الَّذِينَ كَفَرُوا تُصِيبُهُم بِمَا صَنَعُوا قَارِعَةٌ
أَوْ تَحُلُّ قَرِيبًا مِّن دَارِهِمْ حَتَّىٰ يَأْتِيَ وَعْدُ اللَّهِ ۚ إِنَّ اللَّهَ
لَا يُخْلِفُ الْمِيعَادَ ﴿٣١﴾

३१) र यदि कुरआनको माध्यमले पहाड़लाई चलाइदिए हुन्थ्यो, अथवा पृथ्वी टुक्रा-टुक्रा गरी दिएको भए वा मृतहरू संग कुरो गराई दिएको भए । (तापनि ईमान ल्याउँदैन्थे) सबै कार्य अल्लाहको हातमा छ । तब के ईमानवालाहरूलाई यस कुरामा सन्तुष्टि छैन कि ? यदि अल्लाह चाहन्थ्यो भने समस्त मान्छेहरूलाई सही बाटो देखाउने थियो । कुफ्फारलाई त उनको दुष्टयाईको बदलामा सधै कुनै न कुनै कडा दण्ड पुगी रहने छ अथवा उनका घरहरूको नजिक पुगी रहनेछ । यहाँसम्म कि अल्लाहको वाचा उनका नजिक आई नपुगोस् । निःसन्देह अल्लाह आफ्नो वाचाको विरुद्ध जाँदैन ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّن قَبْلِكَ فَأَمْلَيْتُ لِلَّذِينَ
كَفَرُوا ثُمَّ أَخَذْتُهُمْ ۖ فَكَيْفَ كَانَ عِقَابِ ﴿٣٢﴾

३२) निःसन्देह तपाई भन्दा पहिलेका पैगम्बरहरूको उपहास गरिएको थियो, र मैले पनि काफिरहरूलाई प्रश्रय दिएको थिएँ, अनि उनीहरूलाई समातिएको थियो । (हेर) दण्ड कस्तो रह्यो ?

أَفَمَنْ هُوَ قَائِمٌ عَلَىٰ كُلِّ نَفْسٍ بِمَا كَسَبَتْ ۗ وَجَعَلُوا لِلَّهِ
شُرَكَاءَ قُلْ سَمُّوهُمْ ۚ أَمْ تُنَبِّئُونَهُ بِمَا لَا يَعْلَمُ فِي الْأَرْضِ أَم
بِظَاهِرٍ مِّنَ الْقَوْلِ ۗ بَلْ زُيِّنَ لِلَّذِينَ كَفَرُوا مَكْرُهُمْ
وَصُدُّوا عَنِ السَّبِيلِ ۗ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ
هَادٍ ﴿٣٣﴾

३३) के त्यो (अल्लाह) जसले प्रत्येक व्यक्तिमाथि उसले गरेको कार्यहरूको, निरीक्षण गर्नेवाला छ, तापनि उनीहरूले अल्लाहको साझेदार ठहराउँछन् । भनिदिनु होस्: "उनीहरूको नाम त बताऊ । के तिमी अल्लाहलाई त्यो कुरो सुनाउँदछौ

जो त्यो जमीनमा जानेकै छैन । अथवा मात्र सतही-सारहिन कुरो गर्दछौ ? । कुरो यो छः कि कुफ्र गर्नेहरूलाई उनको धोखाहरूलाई सुहाँउदो बनाई दिइएको छ, र उनी असल बाटोबाट रोकिदिइएका छन् । र जसलाई अल्लाहले मार्ग विचलित गर्दछ उसकोलागि मार्गदर्शक कोही पनि छैन ।

لَهُمْ عَذَابٌ فِي الْحَيٰوةِ الدُّنْيَا وَلَعَذَابُ الْاٰخِرَةِ اَشَقُّ ۚ وَمَا لَهُمْ مِّنَ اللّٰهِ مِنْ وَّاقٍ ﴿٣٤﴾

३४) उनको लागि संसारिक जिन्दगीमा पनि सजाय छ, र आखिरतको सजाय त अत्यन्त कडा छ । उनीलाई अल्लाहको क्रोधबाट बचाउने वाला कोही पनि छैन ।

مَثَلُ الْجَنَّةِ الَّتِيْ وُعِدَ الْمُتَّقُوْنَ ۗ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۗ اُكُلُهَا دَآئِمٌ وَّظِلُّهَا ۗ تِلْكَ عُقْبَى الَّذِيْنَ اتَّقَوْا ۖ وَّعُقْبَى الْكٰفِرِيْنَ النَّارُ ﴿٣٥﴾

३५) त्यस जन्नत (स्वर्ग) जसको वाचा संयमीहरूलाई दिइएको छ । विशेषता यो हो कि त्यसको तलबाट नहरहरू बगीरहेका छन् । उसका मिष्ठान (फलहरू) सधैं रहनेवाला छन् र त्यसको छायाँ पनि । यो नतिजा छ, सहनशीलहरूको र काफिरहरूको नतीजा नर्क छ ।

وَالَّذِيْنَ اٰتَيْنٰهُمُ الْكِتٰبَ يَفْرَحُوْنَ بِمَآ اُنْزِلَ اِلَيْكَ وَمِنَ الْاَحْزَابِ مَنْ يُّنْكِرُ بَعْضَهٗ ۗ قُلْ اِنَّمَآ اُمِرْتُ اَنْ اَعْبُدَ اللّٰهَ وَلَآ اُشْرِكَ بِهٖ ۗ اِلَيْهِ اَدْعُوْا وَاِلَيْهِ مَاٰبِ ﴿٣٦﴾

३६) जसलाई हामीले पुस्तक दिएका छौं, त्योमध्ये केही तपाईं माथि जे उतारिएको छ उसबाट प्रसन्न हुन्छन्, र अर्को समुदाय उसको केही कुराको विपरित छन् । तपाई घोषणा गरिदिनुस् किः मलाई त यही नै हुकुम दिइएको छ, कि म

अल्लाहको इबादत गरूँ र उसको साझेदार न बनाऊँ । मैले त उसैतर्फ बोलाई रहेको छु, र उसै तर्फ मलाई फर्किनुछ ।

وَكَذَٰلِكَ أَنزَلْنَٰهُ حُكْمًا عَرَبِيًّا ۚ وَلَئِنِ اتَّبَعْتَ أَهْوَآءَهُم بَعْدَ مَا جَآءَكَ مِنَ الْعِلْمِ ۙ مَا لَكَ مِنَ اللَّهِ مِن وَلِيٍّ وَلَا وَاقٍ ٣٧

३७) यस्तै मैले यस "कुरआनलाई" अरबी भाषामा आदेश उत्तारेको छुँ । यदि तपाईले ज्ञान आइसकेपछि उनको इच्छाहरूको परीपूर्ति गर्नु भयो तब अल्लाहको (सजाय) बाट तपाईंलाई न कोही सहयोगी भेटिनेछ र नत कोही बचाउनेवाला ।

وَلَقَدْ أَرْسَلْنَا رُسُلًا مِّن قَبْلِكَ وَجَعَلْنَا لَهُمْ أَزْوَٰجًا وَذُرِّيَّةً ۚ وَمَا كَانَ لِرَسُولٍ أَن يَأْتِيَ بِـَٔايَةٍ إِلَّا بِإِذْنِ اللَّهِ ۗ لِكُلِّ أَجَلٍ كِتَابٌ ٣٨

३८) हामीले तपाई भन्दा पहिला पनि धेरै पैगम्बरहरू पठाई सकेका छौं । र हामीले उनीसबैलाई बाल बच्चावाला बनाएका थियौं । कुनै रसूलबाट हुन सक्दैन्थ्यो कि कुनै निशानी बिना अल्लाहको इजाजत बाट लिएर आओस् । हरेक निश्चित वचनको एउटा लिखत छ ।

يَمْحُوا اللَّهُ مَا يَشَآءُ وَيُثْبِتُ ۖ وَعِندَهُۥٓ أُمُّ الْكِتَٰبِ ٣٩

३९) अल्लाहले जो चाहन्छ मेटाई दिन्छ र जो चाहन्छ ठीकठाक राख्दछ, र "लौहे महफूज" (मूल किताब) उसैको साथमा छ ।

وَإِن مَّا نُرِيَنَّكَ بَعْضَ الَّذِى نَعِدُهُمْ أَوْ نَتَوَفَّيَنَّكَ فَإِنَّمَا عَلَيْكَ الْبَلَٰغُ وَعَلَيْنَا الْحِسَابُ ٤٠

४०) उनीसंग गरीएका वाचाहरू मध्ये यदि तपाईंलाई हामीले कुनै देखाइदिएँ अथवा तपाईलाई मृत्यु नै दिएं, त तपाईं माथि त मात्र पुऱ्याइ दिनु नै छ, (सत्य-असत्य) छुट्याउने त हाम्रो जिम्मा मै छ ।

أَوَلَمْ يَرَوْا أَنَّا نَأْتِي الْأَرْضَ نَنقُصُهَا مِنْ أَطْرَافِهَا ۚ وَاللَّهُ يَحْكُمُ لَا مُعَقِّبَ لِحُكْمِهِ ۚ وَهُوَ سَرِيعُ الْحِسَابِ ﴿٤١﴾

४१) के उनीहरूले देख्दैनन् ? "कि हामी पृथ्वीलाई उसको छेउबाट घटाउँदै आइरहेका छौं, अल्लाहले आदेश गर्दछ, कोही उसको आदेशहरूलाई पछाडि गर्नेवाला छैन, उसले छिटै हिसाब लिनेवाला छ ।

وَقَدْ مَكَرَ الَّذِينَ مِن قَبْلِهِمْ فَلِلَّهِ الْمَكْرُ جَمِيعًا ۖ يَعْلَمُ مَا تَكْسِبُ كُلُّ نَفْسٍ ۗ وَسَيَعْلَمُ الْكُفَّارُ لِمَنْ عُقْبَى الدَّارِ ﴿٤٢﴾

४२) उनी भन्दा पहिलाका मन्छेहरूले पनि आफ्नो ढाट्ने कुकृत्यलाई कम गरेका थिएनन्, परन्तु समस्त उपायहरू अल्लाहकै हुन्, जुन व्यक्ति जे पनि गरी रहेको छ, अल्लाहको दृष्टिमा छ, काफिरहरूलाई अहिले थाहा भइहाल्छ कि परलोकको पारितोषिक कसकोलागि छ ।

وَيَقُولُ الَّذِينَ كَفَرُوا لَسْتَ مُرْسَلًا ۚ قُلْ كَفَىٰ بِاللَّهِ شَهِيدًا بَيْنِي وَبَيْنَكُمْ وَمَنْ عِندَهُ عِلْمُ الْكِتَابِ ﴿٤٣﴾

४३) यी काफिरहरू भन्दछन: कि तपाई अल्लाहको रसूल होइन-तपाई जवाफ दिनुस् कि ममा र तिमीमा अल्लाह गवाही दिनेवाला प्रयाप्त छ । र ऊ पनि जससंग पुस्तकको ज्ञान छ ।



# सूरतु इब्राहीम-१४



सुरतु इब्राहीम मक्की हो, यसमा ५२ आयतहरू र ७ रुकूअहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ लाम रा ! यो उच्चस्तरीय किताब हामीले तपाई माथि उतारेका छौं । कि तपाईं मनुष्यहरूलाई अँध्यारोबाट उज्यालो तर्फ ल्याउनुस्, उनको पालनहारको आदेशबाट महान र सबै प्रशंसा भएको अल्लाह तर्फ ।

الٓرٰ ۚ كِتٰبٌ اَنْزَلْنٰهُ اِلَيْكَ لِتُخْرِجَ النَّاسَ مِنَ الظُّلُمٰتِ اِلَى النُّوْرِ ۙ۬ بِاِذْنِ رَبِّهِمْ اِلٰى صِرَاطِ الْعَزِيْزِ الْحَمِيْدِ ۝١

२) अल्लाहकै छ जे सुकै आकाश र पृथ्वीमा छ र काफिरहरूका लागि त कठोर सजाय छ ।

اللّٰهِ الَّذِيْ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۗ وَوَيْلٌ لِّلْكٰفِرِيْنَ مِنْ عَذَابٍ شَدِيْدِ ۝٢

३) जो परलोकको तुलनामा सांसारिक जिन्दगीलाई रुचाउँछन् र अल्लाहको बाटोबाट रोक्छन् र त्यसमा बाङ्गा टिङ्गा गर्न चाहन्छन् उनीहरूनै ठूलो मार्ग विचलनमा छन् ।

الَّذِيْنَ يَسْتَحِبُّوْنَ الْحَيٰوةَ الدُّنْيَا عَلَى الْاٰخِرَةِ وَيَصُدُّوْنَ عَنْ سَبِيْلِ اللّٰهِ وَيَبْغُوْنَهَا عِوَجًا ۗ اُولٰٓئِكَ فِيْ ضَلٰلٍۢ بَعِيْدٍ ۝٣

४) हामीले प्रत्येक नबीलाई उसको सामुदायिक भाषामा नै पठाएका छौं त्यसबाट उनको सामु सजिलो र स्पष्ट किसिमले बयान गरिदेउन् । अब अल्लाह जसलाई चाहे मार्गबाट विचलित गरिदिन्छ र जसलाई चाहे बाटो देखाई दिन्छ । ऊ सर्वशक्तिशाली र अति विवेकशील छ ।

وَمَآ اَرْسَلْنَا مِنْ رَّسُوْلٍ اِلَّا بِلِسَانِ قَوْمِهٖ لِيُبَيِّنَ لَهُمْ ۗ فَيُضِلُّ اللّٰهُ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ۗ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ۝٤

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا أَنْ أَخْرِجْ قَوْمَكَ مِنَ الظُّلُمَاتِ إِلَى النُّورِ وَذَكِّرْهُمْ بِأَيَّامِ اللَّهِ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِكُلِّ صَبَّارٍ شَكُورٍ ⑤

५) (याद राख्नु) हामीले मूसालाई आफ्नो निशानी दिएर पठाएका थिएँ । जसबाट तिमी आफ्नो समुदायलाई अध्याँरोबाट उज्यालोमा निकाल र उनीहरूलाई अल्लाहको कृपाहरूको सम्झना दिलाऊ । निःसन्देह यसमा निशानीहरू छन् प्रत्येक धैर्यवान एवं कृतज्ञहरूका लागि ।

وَإِذْ قَالَ مُوسَىٰ لِقَوْمِهِ اذْكُرُوا نِعْمَةَ اللَّهِ عَلَيْكُمْ إِذْ أَنْجَاكُمْ مِنْ آلِ فِرْعَوْنَ يَسُومُونَكُمْ سُوءَ الْعَذَابِ وَيُذَبِّحُونَ أَبْنَاءَكُمْ وَيَسْتَحْيُونَ نِسَاءَكُمْ ۚ وَفِي ذَٰلِكُمْ بَلَاءٌ مِنْ رَبِّكُمْ عَظِيمٌ ⑥

६) जुनबेला मूसाले आफ्नो समुदाय सँग भनेः कि अल्लाहको त्यस कृपालाई सम्झ जुन उसले तिमी माथि गरेको छ, जब उसले तिमीलाई फिरऔनका अनुयायीहरूबाट मुक्ति दिलायो, जो तिमीलाई साह्रै दुःख दिन्थे, र तिम्रा छोराहरूलाई हत्या गर्दथे र तिम्रा छोरीहरूलाई जीवितै छाड्दथे । र त्यसमा तिम्रो रबको तर्फबाट तिमी माथि धेरै ठूलो परीक्षा थियो ।''

وَإِذْ تَأَذَّنَ رَبُّكُمْ لَئِنْ شَكَرْتُمْ لَأَزِيدَنَّكُمْ ۖ وَلَئِنْ كَفَرْتُمْ إِنَّ عَذَابِي لَشَدِيدٌ ⑦

७) र जब तिम्रो पालनकर्ताले तिमीलाई सतर्क गराई दियो, कि यदि तिमी कृतज्ञता प्रकट गर्दछौ तब निःसन्देह हामीले तिमीलाई धेरै दिन्छौं, र यदि तिमी कृतघ्नता गर्छौ भने निःसन्देह मेरो दण्ड धेरै कठोर छ ।

وَقَالَ مُوسَىٰ إِنْ تَكْفُرُوا أَنْتُمْ وَمَنْ فِي الْأَرْضِ جَمِيعًا فَإِنَّ اللَّهَ لَغَنِيٌّ حَمِيدٌ ⑧

८) मूसाले भन्नुभयोः कि यदि तिमी सबै र यस संसारका समग्र मानिस अल्लाहको कृतघ्नता गरे, भने पनि अल्लाह निस्पृह तथा प्रशंसनीय छ ।

اَلَمۡ يَاۡتِكُمۡ نَبَؤُا الَّذِيۡنَ مِنۡ قَبۡلِكُمۡ قَوۡمِ نُوۡحٍ وَّعَادٍ وَّثَمُوۡدَ ۛ وَالَّذِيۡنَ مِنۡۢ بَعۡدِهِمۡ ۛ لَا يَعۡلَمُهُمۡ اِلَّا اللّٰهُ ؕ جَآءَتۡهُمۡ رُسُلُهُمۡ بِالۡبَيِّنٰتِ فَرَدُّوۡۤا اَيۡدِيَهُمۡ فِىۡۤ اَفۡوَاهِهِمۡ وَقَالُوۡۤا اِنَّا كَفَرۡنَا بِمَاۤ اُرۡسِلۡتُمۡ بِهٖ وَاِنَّا لَفِىۡ شَكٍّ مِّمَّا تَدۡعُوۡنَـنَاۤ اِلَيۡهِ مُرِيۡبٍ ۝٩

९) के तिमी सम्म तिमी भन्दा पहिलेका मान्छेहरू अर्थात "नूह" र "आद" र "समूदको" खबर आएन र उनका पछिवालाहरूको जसलाई मात्र अल्लाह बाहेक अरु कोही जान्दैन । उनको नजिक उनका रसूलले चमत्कार ल्याए तर उनीहरूले आफ्नो हात आफ्नो मुखमा थिचिलिए र स्पस्ट भनि दिए: कि जुन वस्तु तपाईलाई दिएर पठाइएको छ हामी त्यसलाई नकार्दछौं, र जुन कुरा तर्फ तपाईले हामीलाई बोलाई रहनु भएको छ हामीलाई त्यसमा ठूलो शंका छ ।"

قَالَتۡ رُسُلُهُمۡ اَفِى اللّٰهِ شَكٌّ فَاطِرِ السَّمٰوٰتِ وَالۡاَرۡضِ ؕ يَدۡعُوۡكُمۡ لِيَـغۡفِرَ لَـكُمۡ مِّنۡ ذُنُوۡبِكُمۡ وَيُؤَخِّرَكُمۡ اِلٰٓى اَجَلٍ مُّسَمًّى ؕ قَالُوۡۤا اِنۡ اَنۡتُمۡ اِلَّا بَشَرٌ مِّثۡلُنَا ؕ تُرِيۡدُوۡنَ اَنۡ تَصُدُّوۡنَا عَمَّا كَانَ يَعۡبُدُ اٰبَآؤُنَا فَاۡتُوۡنَا بِسُلۡطٰنٍ مُّبِيۡنٍ ۝١٠

१०) उनको रसूलहरूले उनीलाई भने: कि के अल्लाहको बारेमा तिमीलाई शंका छ, जसले आकाश र पृथ्वी बनाएको छ ?। उसले त तिमीलाई यस कारण बोलाई रहेको छ कि तिम्रा समस्त पापहरूलाई माफ गरि देओस् र एउटा निश्चित अवधिसम्म तिमीलाई छूट देओस्" । उनीहरूले भने: कि तिमी त हामी जस्तै मान्छे हौ, तिमी चाहन्छौ, कि हामीलाई ती कुराहरूको पूजाबाट रोकी देऊ जसका पूजा हाम्रा पूर्वजहरूले गर्दै आइरहेका थिए, ठीक छ हाम्रा सामु कुनै प्रत्यक्ष प्रमाण पेश गर" ।

قَالَتْ لَهُمْ رُسُلُهُمْ إِن نَّحْنُ إِلَّا بَشَرٌ مِّثْلُكُمْ وَلَٰكِنَّ
اللَّهَ يَمُنُّ عَلَىٰ مَن يَشَاءُ مِنْ عِبَادِهِ ۖ وَمَا كَانَ لَنَا
أَن نَّأْتِيَكُم بِسُلْطَانٍ إِلَّا بِإِذْنِ اللَّهِ ۚ وَعَلَى اللَّهِ
فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ ﴿١١﴾

११) उनका पैग़म्बरहरूले उनीसँग भनें कि यो त सत्य छ कि हामी तिमी जस्तै मानिस हौं परन्तु अल्लाह आफ्ना सेवकहरूबाट जसमाथि चाहन्छ आफ्नो पुरस्कार प्रदान गर्दछ, र अल्लाहको आज्ञा बिना हाम्रो तागत छैन कि हामी कुनै चमत्कार तिमीलाई देखाऔं । र ईमानवालाहरूले मात्र अल्लाह माथि भरोसा राख्दैछन ।

وَمَا لَنَا أَلَّا نَتَوَكَّلَ عَلَى اللَّهِ وَقَدْ هَدَانَا سُبُلَنَا ۚ
وَلَنَصْبِرَنَّ عَلَىٰ مَا آذَيْتُمُونَا ۚ وَعَلَى اللَّهِ
فَلْيَتَوَكَّلِ الْمُتَوَكِّلُونَ ﴿١٢﴾

१२) आखिर के कारण छ कि हामी अल्लाह माथि भरोसा नराखौं ? जब कि उसैले हामीलाई हाम्रा बाटोहरू देखाएको छ । जुन कष्टहरू तिमीले हामीलाई दिन्छौ त्यस माथि हामीले धैर्य नै गर्छौं । र भरोसा गर्नेवालाहरूको लागि यहि उचित छ कि उनी अल्लाह माथि नै भरोसा गरुन् ।

وَقَالَ الَّذِينَ كَفَرُوا لِرُسُلِهِمْ لَنُخْرِجَنَّكُم مِّنْ
أَرْضِنَا أَوْ لَتَعُودُنَّ فِي مِلَّتِنَا ۖ فَأَوْحَىٰ إِلَيْهِمْ رَبُّهُمْ
لَنُهْلِكَنَّ الظَّالِمِينَ ﴿١٣﴾

१३) काफिरहरूले आफ्ना रसुलहरू (पैगम्बर) सँग भनें: कि हामीले तिमीहरूलाई देश निकाला गरी दिन्छौं अथवा तिमी पुनः हाम्रो धर्ममा फर्की आउनुपर्छ'' तब उनको पालनहारले उनीतर्फ वह्‌य (सन्देश) पठायो ''कि हामीले ती अत्याचारीहरूलाई नै नष्ट गरि दिनेछौं'' ।

وَلَنُسْكِنَنَّكُمُ الْأَرْضَ مِن بَعْدِهِمْ ۚ ذَٰلِكَ لِمَنْ خَافَ
مَقَامِي وَخَافَ وَعِيدِ ﴿١٤﴾

१४) र उनीपछि हामीले स्वयं तिमीलाई यस भूमिमा बसाउनेछौं, यो उनको

लागि उपहार हो जो मेरो सामुन्ने उपस्थित हुन डर मान्दछन्, र मेरो त्रासबाट भयभीत रहन्छन् ।

وَاسْتَفْتَحُوا وَخَابَ كُلُّ جَبَّارٍ عَنِيدٍ ﴿١٥﴾

१५) र उनले फैसला मागे र समस्त बदमाश र हठी मान्छेहरू विफल भइहाले ।

مِّن وَرَائِهِ جَهَنَّمُ وَيُسْقَىٰ مِن مَّاءٍ صَدِيدٍ ﴿١٦﴾

१६) उनको सामुन्ने नर्क छ जहाँ तिनीहरूलाई पिपको पानी पिलाइने छ ।

يَتَجَرَّعُهُ وَلَا يَكَادُ يُسِيغُهُ وَيَأْتِيهِ الْمَوْتُ مِن كُلِّ مَكَانٍ وَمَا هُوَ بِمَيِّتٍ ۖ وَمِن وَرَائِهِ عَذَابٌ غَلِيظٌ ﴿١٧﴾

१७) जसलाई कठीनाईका साथ घुट घुटै गरी पिउने छन्, तर त्यसलाई घाँटीबाट तल उतार्न सक्ने छैनन् र उनलाई प्रत्येक ठाँउबाट मृत्यु आइरहेको देखिनेछ, परन्तु तिनीहरू मर्न सक्नेवाला होइनन् । फेरि त्यसको पछाडि तिनीहरूको लागि ठूलो सजाय छ ।

مَّثَلُ الَّذِينَ كَفَرُوا بِرَبِّهِمْ ۖ أَعْمَالُهُمْ كَرَمَادٍ اشْتَدَّتْ بِهِ الرِّيحُ فِي يَوْمٍ عَاصِفٍ ۖ لَّا يَقْدِرُونَ مِمَّا كَسَبُوا عَلَىٰ شَيْءٍ ۚ ذَٰلِكَ هُوَ الضَّلَالُ الْبَعِيدُ ﴿١٨﴾

१८) उनीहरूको उदाहरण, जसले आफ्नो पालनकर्ताबाट कुफ्र गरे उनका कर्महरू त्यस खरानी जस्तो छ, जसमाथि तीव्र वायु हुरी आएको दिन चलोस, जे पनि उनीहरूले गरे त्यस मध्येबाट कुनै वस्तुमाथि आधिपत्य राख्न सक्दैनन्, र यही अति टाढाको भ्रम छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ ۚ إِن يَشَأْ يُذْهِبْكُمْ وَيَأْتِ بِخَلْقٍ جَدِيدٍ ﴿١٩﴾

१९) के तिमीले देखेनौ कि अल्लाहले आकाशहरू र पृथ्वीलाई अत्यन्त कौशलका साथ बनाएको छ । यदि उसले चाह्यो भने तिमी सबैलाई

नष्ट गरिदिन्छ र नयाँ प्राणीहरू ल्याई दिन्छ ।

وَّمَا ذٰلِكَ عَلَى اللّٰهِ بِعَزِيْزٍ ﴿٢٠﴾

२०) अल्लाहका लागि यो कार्य केही पनि कठिन छैन ।

وَبَرَزُوْا لِلّٰهِ جَمِيْعًا فَقَالَ الضُّعَفٰٓؤُا لِلَّذِيْنَ
اسْتَكْبَرُوْٓا اِنَّا كُنَّا لَكُمْ تَبَعًا فَهَلْ اَنْتُمْ مُّغْنُوْنَ
عَنَّا مِنْ عَذَابِ اللّٰهِ مِنْ شَيْءٍ ؕ قَالُوْا لَوْ هَدٰىنَا
اللّٰهُ لَهَدَيْنٰكُمْ ؕ سَوَآءٌ عَلَيْنَآ اَجَزِعْنَآ اَمْ صَبَرْنَا
مَا لَنَا مِنْ مَّحِيْصٍ ﴿٢١﴾

२१) सबै अल्लाहको सामु प्रत्यक्षरूपले उभिने छन् त्यस बेला दुर्बल मान्छेहरू सबल मान्छेसँग भन्ने छन्: कि हामी त तिम्रा अधिनस्त थियौं । त के तिमी अल्लाहको सजाय मध्येबाट केही सजाय घटाउन सक्छौ'' ? उनी उत्तर दिनेछन् ''कि यदि अल्लाहले हामीलाई मार्गदर्शन गरेको भए हामी पनि तिम्रो अवश्य नेतृत्व गर्थ्यौं'' । अब त हामीमाथि बेचैनी र सन्तोष गर्नु दुवै एउटै छ । हाम्रो लागि कुनै मुक्ति छैन ।

وَقَالَ الشَّيْطٰنُ لَمَّا قُضِيَ الْاَمْرُ اِنَّ اللّٰهَ وَعَدَكُمْ
وَعْدَ الْحَقِّ وَوَعَدْتُّكُمْ فَاَخْلَفْتُكُمْ ؕ وَمَا كَانَ لِيَ
عَلَيْكُمْ مِّنْ سُلْطٰنٍ اِلَّآ اَنْ دَعَوْتُكُمْ فَاسْتَجَبْتُمْ
لِيْ ۚ فَلَا تَلُوْمُوْنِيْ وَلُوْمُوْٓا اَنْفُسَكُمْ ؕ مَآ اَنَا
بِمُصْرِخِكُمْ وَمَآ اَنْتُمْ بِمُصْرِخِيَّ ؕ اِنِّيْ كَفَرْتُ بِمَآ
اَشْرَكْتُمُوْنِ مِنْ قَبْلُ ؕ اِنَّ الظّٰلِمِيْنَ لَهُمْ
عَذَابٌ اَلِيْمٌ ﴿٢٢﴾

२२) र जब हिसाबकिताबको फैसला गरी दिइनेछ, तब शैतानले भन्ने छः ''कि वास्तवमा अल्लाहले त तिमीलाई सत्य वाचा गरेको थियो । तर मैले तिमीबाट जुन वाचाहरू गरेको थिएँ, त्यो मैले पूरा गरिनँ, मेरो तिमीमाथि कुनै दबाव त थिएन, हो मैले, तिमीलाई बोलाएँ र तिमीले मेरो कुरा मान्यौ । तिमीले ममाथि आरोप नलगाऊ बरु तिमीहरू आफूलाई नै धिक्कार गर, म तिमीहरूलाई कुनै सहयोग गर्न सक्दिन, न तिमीहरू नै मलाई

सहयोग गर्न सक्छौ । म त प्रारम्भदेखि मान्दिन कि तिमीले यस अघि मलाई अल्लाहको साझेदार ठहऱ्याई रहेका थियौ । निःसन्देह अपराधीहरूका लागि धेरै कष्टप्रद सजाय छ ।

وَأُدْخِلَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا بِإِذْنِ رَبِّهِمْ ۖ تَحِيَّتُهُمْ فِيهَا سَلَامٌ ﴿٢٣﴾

२३) जुन मानिसहरूले ईमान ल्याए र असल कार्य गरे, तिनीहरू जन्नतमा (स्वर्गमा) प्रवेश गर्ने छन्, जसको तल झरनाहरू फुटेका छन् । जहाँ उनीहरू आफ्नो पालनकर्ताको आज्ञाले सधै रहने छन् । जहाँ उनको स्वागत ''सलाम''बाट हुनेछ ।

أَلَمْ تَرَ كَيْفَ ضَرَبَ اللَّهُ مَثَلًا كَلِمَةً طَيِّبَةً كَشَجَرَةٍ طَيِّبَةٍ أَصْلُهَا ثَابِتٌ وَفَرْعُهَا فِي السَّمَاءِ ﴿٢٤﴾

२४) के तपाईंले देख्नु भएन कि अल्लाह तआलाले पवित्र कुरोको उदाहरण कुन किसिमले वर्णन गरेको छ ? एउटा पवित्र वृक्षको जस्तै जसको जरो बलियो छ र जसका हाँगाहरू अकाशमा छन् ।

تُؤْتِي أُكُلَهَا كُلَّ حِينٍ بِإِذْنِ رَبِّهَا ۗ وَيَضْرِبُ اللَّهُ الْأَمْثَالَ لِلنَّاسِ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٢٥﴾

२५) जो आफ्नो पालनहारको आदेशबाट आफ्ना फलहरू संधै ल्याउँछ, र अल्लाह मानिसहरू सामु उदाहरण प्रस्तुत गर्दछ जसबाट उनीहरू राम्रो ज्ञान प्राप्त गरुन् ।

وَمَثَلُ كَلِمَةٍ خَبِيثَةٍ كَشَجَرَةٍ خَبِيثَةٍ اجْتُثَّتْ مِنْ فَوْقِ الْأَرْضِ مَا لَهَا مِنْ قَرَارٍ ﴿٢٦﴾

२६) र अपवित्र कुरोको उदाहरण अपवित्र वृक्ष जस्तै छ, जो भूमिको माथिल्लो सतहबाटै उखेलिएको छ त्यसमा केही पनि बलियोपना छदैछैन ।

يُثَبِّتُ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا بِالْقَوْلِ الثَّابِتِ فِي الْحَيٰوةِ الدُّنْيَا وَفِي الْاٰخِرَةِ ۚ وَيُضِلُّ اللّٰهُ الظّٰلِمِيْنَ ۙ وَيَفْعَلُ اللّٰهُ مَا يَشَآءُ ﴿٢٧﴾

२७) ईमानवालाहरूलाई अल्लाह सत्य निष्ठाको साथमा सबल राख्दछ दुनियाको जीवनमा पनि र मृत्युपछिको जिन्दगीमा पनि, हो: अन्यायीहरूलाई अल्लाहले भ्रमित गरिदिन्छ र अल्लाह जो चाहन्छ, गरिहाल्छ ।

اَلَمْ تَرَ اِلَى الَّذِيْنَ بَدَّلُوْا نِعْمَتَ اللّٰهِ كُفْرًا وَّاَحَلُّوْا قَوْمَهُمْ دَارَ الْبَوَارِ ﴿٢٨﴾

२८) के तपाईंले तिनीहरूको स्थितिमाथि विचार गर्नु भएन जसले अल्लाहको उपहारको साटो अकृतघ्नता गरे र आफ्नो समुदायलाई बर्बादीको घरसम्म पुऱ्याइदिए ।

جَهَنَّمَ ۚ يَصْلَوْنَهَا ۗ وَبِئْسَ الْقَرَارُ ﴿٢٩﴾

२९) अर्थात नर्कमा जसमा यी सबै जान्छन् जुन असाध्यै नराम्रो ठाउँ छ ।

وَجَعَلُوْا لِلّٰهِ اَنْدَادًا لِّيُضِلُّوْا عَنْ سَبِيْلِهٖ ۗ قُلْ تَمَتَّعُوْا فَاِنَّ مَصِيْرَكُمْ اِلَى النَّارِ ﴿٣٠﴾

३०) उनीहरूले अल्लाहको बरोबरी (साझेदार) बनाइलिए जसबाट मान्छेहरूलाई अल्लाहको बाटोबाट विमुख गराउन् , तपाईं भनिदिनु-होस्: "कि ठिकै छ, अलि मौज गरी लेऊ निःसन्देह तिम्रो ठेगाना त नर्कमै छ ।

قُلْ لِّعِبَادِيَ الَّذِيْنَ اٰمَنُوْا يُقِيْمُوا الصَّلٰوةَ وَيُنْفِقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ يَوْمٌ لَّا بَيْعٌ فِيْهِ وَلَا خِلٰلٌ ﴿٣١﴾

३१) मेरा ईमानदार सेवकहरूलाई भनिदिनुस् नमाजहरूलाई निरन्तरता दिदैं कायम गरुन्, र जुन कुरो मैले उनलाई दिइराखेको छु त्यसमध्येबाट केही न केही खुल्ला र गोप्य रूपमा खर्च गर्दै गरुन्, यसभन्दा पहिले: कि त्यो दिन आइपुगोस् जसमा न क्रय-बिक्रय हुनेछ नत मित्रता न प्रेम काम लाग्नेछ ।

३२) अल्लाह त्यो हो, जसले पृथ्वी र आकाशलाई निर्माण गरेको छ । र आकाशबाट वर्षा बर्साएर तिम्रो जीविकाको लागि फल निकालेको छ र, डुङ्गाहरूलाई तिम्रो अधीनमा गरिदिएको छ, कि समुद्रहरूमा उसको आदेशबाट हिलडुल गरुन् उसैले खोला र नहरहरू तिम्रो अधीनमा गरिदिएको छ ।

اَللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ وَاَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَاَخْرَجَ بِهٖ مِنَ الثَّمَرٰتِ رِزْقًا لَّكُمْ ۚ وَسَخَّرَ لَكُمُ الْفُلْكَ لِتَجْرِيَ فِي الْبَحْرِ بِاَمْرِهٖ ۚ وَسَخَّرَ لَكُمُ الْاَنْهٰرَ ﴿٣٢﴾

३३) उसैले तिम्रा लागि चन्द्र र सूर्यलाई अधिनस्थ गरिदिएको छ, कि सधैं नै गतिशील भइरहेका छन् र रात, दिनलाई पनि तिम्रो कार्यमा लगाई राखेको छ ।

وَسَخَّرَ لَكُمُ الشَّمْسَ وَالْقَمَرَ دَآئِبَيْنِ ۚ وَسَخَّرَ لَكُمُ الَّيْلَ وَالنَّهَارَ ﴿٣٣﴾

३४) उसैले तिमीलाई तिम्रो इच्छित सबै वस्तु दिइराखेको छ । यदि तिमीले अल्लाहको परोपकार गन्न चाहन्छौ भने तिमी पूरै गन्न पनि सक्तैनौ । निःसन्देह मानिस ज्यादैनै अन्यायकारी र कृतघ्न छन् ।

وَاٰتٰىكُمْ مِّنْ كُلِّ مَا سَاَلْتُمُوْهُ ۚ وَاِنْ تَعُدُّوْا نِعْمَتَ اللّٰهِ لَا تُحْصُوْهَا ۗ اِنَّ الْاِنْسَانَ لَظَلُوْمٌ كَفَّارٌ ﴿٣٤﴾

३५) र जब इब्राहीम(अलै.)ले भन्नु भयो कि हे मेरो पालनहार यस नगर (मक्का)लाई शान्ति दायक बनाई देऊ र मलाई र मेरा सन्तानहरूलाई मूर्ति पूजाबाट रक्षा गर ।

وَاِذْ قَالَ اِبْرٰهِيْمُ رَبِّ اجْعَلْ هٰذَا الْبَلَدَ اٰمِنًا وَّاجْنُبْنِيْ وَبَنِيَّ اَنْ نَّعْبُدَ الْاَصْنَامَ ﴿٣٥﴾

३६) हे मेरो पूज्य पालनकर्ता ! यी मूर्तिहरूले थुप्रै मानिसहरूलाई बाटोबाट दिग्भ्रमित गरिदिएका छन्, अनि जसले मेरो अनुशरण गर्नेछ

رَبِّ اِنَّهُنَّ اَضْلَلْنَ كَثِيْرًا مِّنَ النَّاسِ ۚ فَمَنْ تَبِعَنِيْ فَاِنَّهٗ مِنِّيْ ۚ وَمَنْ عَصَانِيْ فَاِنَّكَ غَفُوْرٌ رَّحِيْمٌ ﴿٣٦﴾

ऊ मेरो हुनेछ र जसले मेरो अवज्ञा गर्छ भने निश्चय नै तिमी असीम क्षमा गर्ने र दया दृष्टि गर्नेवाला छौ ।

رَبَّنَآ إِنِّيٓ أَسۡكَنتُ مِن ذُرِّيَّتِي بِوَادٍ غَيۡرِ ذِي زَرۡعٍ عِندَ بَيۡتِكَ ٱلۡمُحَرَّمِ رَبَّنَا لِيُقِيمُواْ ٱلصَّلَوٰةَ فَٱجۡعَلۡ أَفۡـِٔدَةٗ مِّنَ ٱلنَّاسِ تَهۡوِيٓ إِلَيۡهِمۡ وَٱرۡزُقۡهُم مِّنَ ٱلثَّمَرَٰتِ لَعَلَّهُمۡ يَشۡكُرُونَ ﴿٣٧﴾

३७) हे हाम्रो पालनहार ! मैले आफ्ना केही सन्तान यस गैर अबादी भूमिमा तिम्रो असीम दयायुक्त घर (कअ्बा) नजिक बसालेको छु, हे हाम्रो पालनहार ! यो यसकारण, कि तिनीहरू नमाजलाई निरन्तरता देउन् । तसर्थ तिमीले केही मान्छेहरूका हृदयलाई उतातर्फ आकृष्ट गरिदेऊ, र उनीहरूलाई फलहरूको भोजन दिने कृपा गर, जसबाट तिनीहरू तिम्रो स्तुति गरुन् ।

رَبَّنَآ إِنَّكَ تَعۡلَمُ مَا نُخۡفِي وَمَا نُعۡلِنُۗ وَمَا يَخۡفَىٰ عَلَى ٱللَّهِ مِن شَيۡءٖ فِي ٱلۡأَرۡضِ وَلَا فِي ٱلسَّمَآءِ ﴿٣٨﴾

३८) हे हाम्रो पालनहार ! तिमीलाई राम्ररी ज्ञात छ, जुन हामी गोप्य र खुल्ला गर्छौं, र निश्चय नै पृथ्वी र आकाशको कुनै वस्तु अल्लाहबाट लुकेको छैन ।

ٱلۡحَمۡدُ لِلَّهِ ٱلَّذِي وَهَبَ لِي عَلَى ٱلۡكِبَرِ إِسۡمَٰعِيلَ وَإِسۡحَٰقَۚ إِنَّ رَبِّي لَسَمِيعُ ٱلدُّعَآءِ ﴿٣٩﴾

३९) अल्लाहको कृपा छ, जसले मलाई यस बुढेसकालमा "इसमाईल" र "इस्हाक(अलै.)" प्रदान गरे । केही शंका छैन: कि मेरो पालनकर्ता प्रार्थनालाई सुन्नेवाला छ ।

رَبِّ ٱجۡعَلۡنِي مُقِيمَ ٱلصَّلَوٰةِ وَمِن ذُرِّيَّتِيۚ رَبَّنَا وَتَقَبَّلۡ دُعَآءِ ﴿٤٠﴾

४०) हे मेरो पालनकर्ता ! मलाई सधै नमाज पढने बनाई राख र मेरा सन्तानहरूलाई पनि, हे हाम्रो पालनहार मेरो प्रार्थना स्वीकार गर ।

رَبَّنَا اغْفِرْ لِي وَلِوَالِدَيَّ وَلِلْمُؤْمِنِينَ يَوْمَ يَقُومُ الْحِسَابُ ﴿٤١﴾

४१) हे मेरो पालनकर्ता ! हिसाबकिताबको दिन मलाई मुक्ति प्रदान गर र मेरा आमा बालाई पनि मुक्ति देऊ, र अन्य मोमिनहरूलाई पनि मुक्ति देऊ ।

وَلَا تَحْسَبَنَّ اللَّهَ غَافِلًا عَمَّا يَعْمَلُ الظَّالِمُونَ ۚ إِنَّمَا يُؤَخِّرُهُمْ لِيَوْمٍ تَشْخَصُ فِيهِ الْأَبْصَارُ ﴿٤٢﴾

४२) अन्यायकारीहरूको क्रियाकलापबाट अल्लाहलाई अन्जान नसम्भ, उसले त उनीहरूलाई त्यसदिनसम्म छूट दिएको छ जुन दिन आँखाहरू खुलेका खुलै हुनेछन् ।

مُهْطِعِينَ مُقْنِعِي رُءُوسِهِمْ لَا يَرْتَدُّ إِلَيْهِمْ طَرْفُهُمْ ۖ وَأَفْئِدَتُهُمْ هَوَاءٌ ﴿٤٣﴾

४३) तिनीहरूले आफ्ना टाउका उठाएर भागदौड गरी रहने छन् स्वयं आफ्नो तर्फपनि उनको दृष्टि पर्ने छैन र उनका मुटु खाली र शुन्य प्रायः हुनेछ ।

وَأَنذِرِ النَّاسَ يَوْمَ يَأْتِيهِمُ الْعَذَابُ فَيَقُولُ الَّذِينَ ظَلَمُوا رَبَّنَا أَخِّرْنَا إِلَىٰ أَجَلٍ قَرِيبٍ نُّجِبْ دَعْوَتَكَ وَنَتَّبِعِ الرُّسُلَ ۗ أَوَلَمْ تَكُونُوا أَقْسَمْتُم مِّن قَبْلُ مَا لَكُم مِّن زَوَالٍ ﴿٤٤﴾

४४) मान्छेहरूलाई त्यसदिनदेखि सावधान गरिदेऊ जबकि उनीनिर सजाय आइहाल्छ । र, अन्यायकारीहरूले भन्ने छन् कि हे हाम्रा पालनकर्ता "हामीलाई थोरै समय सम्मको छूट देऊ हामी तिम्रो उपदेशलाई स्वीकार गर्नेछौं र पैगम्बरहरू (सन्देशवाहकहरू) को अनुशरण गर्नेछौं" । के तिमी यसभन्दा पहिले पनि शपथ खाने गरेका थिएनौ कि तिमीहरूको पतन कहिले पनि हुने छैन ?

وَسَكَنتُمْ فِي مَسَاكِنِ الَّذِينَ ظَلَمُوا أَنفُسَهُمْ وَتَبَيَّنَ لَكُمْ كَيْفَ فَعَلْنَا بِهِمْ وَضَرَبْنَا لَكُمُ الْأَمْثَالَ ﴿٤٥﴾

४५) र के तिमी उनीहरूको घरहरूमा बसोबास गर्दैनथ्यौ, जसले आफ्नो ज्यानमाथि अन्याय गरे र के

तिमीमाथि त्यो वारदात स्पष्ट भएन कि हामीले उनीसंग के गरेका थियौं । र हामीले धेरै उदाहरण तिमीलाई सम्भ्काउन प्रस्तुत गरिदिएका थियौं ।

४६) यिनीहरूले आफ्ना-आफ्ना चालहरू चलिरहेका छन् र अल्लाहलाई उनीहरूको समस्त चालको ज्ञान छ र उनका चालहरू यस्तो थिएन कि त्यसबाट पहाड अस्थिर भइजाओस् ।

وَقَدْ مَكَرُوا مَكْرَهُمْ وَعِنْدَ اللَّهِ مَكْرُهُمْ وَإِنْ كَانَ مَكْرُهُمْ لِتَزُولَ مِنْهُ الْجِبَالُ ﴿٤٦﴾

४७) तपाईं कहिले पनि यो ख्याल नराख्नुहोस् कि अल्लाह आफ्ना नबी (सन्देष्टा) हरूसंग वाचा विरुद्ध गर्नेछ । अल्लाह सर्वशक्ति सम्पन्न र प्रतिशोधक छ ।

فَلَا تَحْسَبَنَّ اللَّهَ مُخْلِفَ وَعْدِهِ رُسُلَهُ إِنَّ اللَّهَ عَزِيزٌ ذُو انْتِقَامٍ ﴿٤٧﴾

४८) जुन दिन यस धरतीलाई अर्कै धरतीमा परिणत गरिनेछ र आकाश पनि र सबै अल्लाहको सामु मात्र हुनेछन् जो एक्लै छ र जसको सबैमाथि आधिपत्य छ

يَوْمَ تُبَدَّلُ الْأَرْضُ غَيْرَ الْأَرْضِ وَالسَّمَاوَاتُ وَبَرَزُوا لِلَّهِ الْوَاحِدِ الْقَهَّارِ ﴿٤٨﴾

४९) तपाईं त्यसदिन पापीहरूलाई देख्नु हुनेछ, कि जन्जीरमा कोचिएर एकै ठाउँमा जकडिएर हुनेछन् ।

وَتَرَى الْمُجْرِمِينَ يَوْمَئِذٍ مُقَرَّنِينَ فِي الْأَصْفَادِ ﴿٤٩﴾

५०) उनका वस्त्रहरू गन्धकका हुनेछन् र आगोले उनीहरूको अनुहारलाई पनि छोपेको हुनेछ ।

سَرَابِيلُهُمْ مِنْ قَطِرَانٍ وَتَغْشَىٰ وُجُوهَهُمُ النَّارُ ﴿٥٠﴾

५१) यो यसकारण कि अल्लाह हरेक व्यक्तिलाई त्यसले गरेको कार्यको

لِيَجْزِيَ اللَّهُ كُلَّ نَفْسٍ مَا كَسَبَتْ إِنَّ اللَّهَ سَرِيعُ الْحِسَابِ ﴿٥١﴾

फल देओस् निःसन्देह अल्लाहलाई हिसाब लिन केही बेर लाग्दैन ।

هٰذَا بَلٰغٌ لِّلنَّاسِ وَلِيُنْذَرُوْا بِهٖ وَلِيَعْلَمُوْٓا اَنَّمَا هُوَ اِلٰهٌ وَّاحِدٌ وَّلِيَذَّكَّرَ اُولُوا الْاَلْبَابِ ﴿٥٢﴾

५२) यो (कुरआन) समस्त मानिसहरूलाई जानकारी पत्र छ कि यसको माध्यमबाट उसले उनीहरूलाई सावधान गरोस् र राम्रोसंग जानी लेउन्, कि अल्लाह मात्र एउटै मअ्बूद (पूजनीय) छ र त्यसबाट ज्ञानीहरूले सोच समझ गर्न सकुन् ।



## सूरतुल् हिज्र-१५



सूरतुल् हिज्र मक्की हो यसमा ९९आयतहरू र ६ रुकूअ्हरू छन्

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ. लाम. रा. यी अल्लाहको किताबका आयतहरू हुन् र खुल्ला र उज्यालो कुरआनको ।

الٓرٰ تِلْكَ اٰيٰتُ الْكِتٰبِ وَقُرْاٰنٍ مُّبِيْنٍ ①

२) त्यो बेला पनि हुने छ जब कि काफिर आफ्नो मुसलमान हुने इच्छा प्रकट गर्ने छन् ।

رُبَمَا يَوَدُّ الَّذِيْنَ كَفَرُوْا لَوْ كَانُوْا مُسْلِمِيْنَ ②

३) (हे मुहम्मद स.अ. !) तपाईले तिनीहरूलाई तिनीकै अवस्थामा रहन दिनुस् ताकि तिनीहरूले उपभोग गरुन र आनन्द लिउन र (झूठो) आशाले उनीहरूलाई (संसारमा) अल्मलाई राखोस् । शीघ्रनै तिनीहरूलाई थाहा भइहाल्नेछ ।

ذَرْهُمْ يَأْكُلُوْا وَيَتَمَتَّعُوْا وَيُلْهِهِمُ الْاَمَلُ فَسَوْفَ يَعْلَمُوْنَ ③

४) कुनै बस्तीलाई हामीले नष्ट पारेनौं परन्तु त्यसको समय निर्धारित र निश्चित थिए ।

وَمَآ اَهْلَكْنَا مِنْ قَرْيَةٍ اِلَّا وَلَهَا كِتَابٌ مَّعْلُوْمٌ ④

५) कुनै समूह आफ्नो निर्धारित समय भन्दा न आगडि बढ्न सक्छ न पछाडि रहन सक्छ ।

مَا تَسْبِقُ مِنْ اُمَّةٍ اَجَلَهَا وَمَا يَسْتَاْخِرُوْنَ ⑤

६) उनीहरूले "भने: "कि हे त्यो मानिस ! जसमाथि कुरआन उतारिएको छ निःसन्देह तिमी त दिवाना हौ ।"

وَقَالُوْا يٰٓاَيُّهَا الَّذِيْ نُزِّلَ عَلَيْهِ الذِّكْرُ اِنَّكَ لَمَجْنُوْنٌ ⑥

लَوْ مَا تَأْتِينَا بِالْمَلَائِكَةِ إِن كُنتَ مِنَ الصَّادِقِينَ ۝٧

७) यदि तिमी साँचो छौ भने "हाम्रो नजिक फरिश्ताहरूलाई किन ल्याउँदैनौ ?"

مَا نُنَزِّلُ الْمَلَائِكَةَ إِلَّا بِالْحَقِّ وَمَا كَانُوا إِذًا مُّنظَرِينَ ۝٨

८) (भनिदिनुस्): हामीले फरिश्ताहरूलाई सत्यको साथमै पठाउँदछौं र त्यतिखेर तिनीहरूलाई फुर्सद दिइएको हुँदैन ।

إِنَّا نَحْنُ نَزَّلْنَا الذِّكْرَ وَإِنَّا لَهُ لَحَافِظُونَ ۝٩

९) (नि:सन्देह) हामीले नै कुरआनलाई उतारेका छौं र हामीनै यसको संरक्षक हौं ।

وَلَقَدْ أَرْسَلْنَا مِن قَبْلِكَ فِي شِيَعِ الْأَوَّلِينَ ۝١٠

१०) हामीले तपाई भन्दा पहिलाका विभिन्न सम्प्रदायहरूमा रसूलहरू पठाएका थियौं ।

وَمَا يَأْتِيهِم مِّن رَّسُولٍ إِلَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ۝١١

११) र तिनीहरू समीप जुन रसूल पनि आउँथ्यो तिनीहरूले उसको उपहास गर्ने गर्दथे ।

كَذَٰلِكَ نَسْلُكُهُ فِي قُلُوبِ الْمُجْرِمِينَ ۝١٢

१२) यसैप्रकार हामीले त्यस (उपहास) लाई अपराधीहरूको हृदयहरूमा प्रवेश गराइदिन्छौं ।

لَا يُؤْمِنُونَ بِهِ وَقَدْ خَلَتْ سُنَّةُ الْأَوَّلِينَ ۝١٣

१३) (तसर्थ) तिनीहरूले यसमाथि ईमान ल्याउँदैनन्, र तिनीहरू भन्दा अघिका मानिसहरूको तरीका बिती सकेको (तरीका) हो ।

وَلَوْ فَتَحْنَا عَلَيْهِم بَابًا مِّنَ السَّمَاءِ فَظَلُّوا فِيهِ يَعْرُجُونَ ۝١٤

१४) र यदि हामीले तिनीहरूकालागि आकशहरूको ढोका खोलिदेऔं र तिनीहरू त्यहाँ उक्लिन पनि थालुन् ।

لَقَالُوا إِنَّمَا سُكِّرَتْ أَبْصَارُنَا بَلْ نَحْنُ قَوْمٌ مَّسْحُورُونَ ۝١٥

१५) तैपनि यही भन्नेछन्: "कि हाम्रा आँखाहरूलाई मात लागेको छ, बरु हामीमाथि जादू गरिदिइएको छ ।"

وَلَقَدْ جَعَلْنَا فِي السَّمَآءِ بُرُوْجًا وَّزَيَّنّٰهَا لِلنّٰظِرِيْنَ ﴿١٦﴾

१६) निःसन्देह हामीले नै आकाशहरूमा सौर्यमण्डल बनाएका छौं र दर्शकहरूको निम्ति सिंगारेका छौं ।

وَحَفِظْنٰهَا مِنْ كُلِّ شَيْطٰنٍ رَّجِيْمٍ ﴿١٧﴾

१७) र यसलाई प्रत्येक तिरस्कृत शैतानबाट सुरक्षित गरेका छौं ।

اِلَّا مَنِ اسْتَرَقَ السَّمْعَ فَاَتْبَعَهٗ شِهَابٌ مُّبِيْنٌ ﴿١٨﴾

१८) तर हो यदि कुनै (शैतानले) लुकिछिपी सुन्न चाहन्छ भने उसको पछाडी प्रज्वलित लाग्दछ ।

وَالْاَرْضَ مَدَدْنٰهَا وَاَلْقَيْنَا فِيْهَا رَوَاسِيَ وَاَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ شَيْءٍ مَّوْزُوْنٍ ﴿١٩﴾

१९) र पृथ्वीलाई पनि हामीले नै विस्तारित गरेका हौं, र त्यसमाथि अटल पहाड़हरू अवस्थित गर्‍यौं र त्यसमा विभिन्न प्रकारका चीजहरू सन्तुलित रूपमा उत्पन्न गर्‍यौं ।

وَجَعَلْنَا لَكُمْ فِيْهَا مَعَايِشَ وَمَنْ لَّسْتُمْ لَهٗ بِرٰزِقِيْنَ ﴿٢٠﴾

२०) र यसैमा हामीले तिम्रो निम्ति र तिनीहरूको लागि, जसलाई तिमीले जीविका दिदैंनौं, त्यसमा जीविकाका साधनहरू जुटायौं ।

وَاِنْ مِّنْ شَيْءٍ اِلَّا عِنْدَنَا خَزَآئِنُهٗ وَمَا نُنَزِّلُهٗۤ اِلَّا بِقَدَرٍ مَّعْلُوْمٍ ﴿٢١﴾

२१) र हामी कहाँ हरेक कुराका खजाना छन् र हामीले तिनलाई निर्धारित मात्रामा पठाउँछौं ।

وَاَرْسَلْنَا الرِّيٰحَ لَوَاقِحَ فَاَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءً فَاَسْقَيْنٰكُمُوْهُ وَمَآ اَنْتُمْ لَهٗ بِخٰزِنِيْنَ ﴿٢٢﴾

२२) र हामीले नै भारी हावाहरूमा गति उत्पन्न गराउँछौ र हामीले नै आकाशहरूबाट पानी बर्साउँछौ र हामीले नै तिमीहरूलाई त्यसको पानी पिलाउँछौं, र तिमी त त्यसको भण्डार गर्ने पनि होइनौं ।

وَاِنَّا لَنَحْنُ نُحْيٖ وَنُمِيْتُ وَنَحْنُ الْوٰرِثُوْنَ ﴿٢٣﴾

२३) र हामीले नै जीवन प्रदान गर्दछौं र

हामीले नै मृत्यु दिन्छौं, र हामी नै सबैका संरक्षक हौं ।

وَلَقَدْ عَلِمْنَا الْمُسْتَقْدِمِينَ مِنكُمْ وَلَقَدْ عَلِمْنَا الْمُسْتَأْخِرِينَ ﴿٢٤﴾

२४) जुन मानिसहरू तिमी भन्दा पहिले बितिसकेका छन् हामीलाई तिनीहरूको बारेमा थाहा छ, र जो पछि आउनेवाला छन् उनीहरूको बारेमा पनि हामीलाई थाहा छ ।

وَإِنَّ رَبَّكَ هُوَ يَحْشُرُهُمْ ۚ إِنَّهُ حَكِيمٌ عَلِيمٌ ﴿٢٥﴾

२५) तपाईको पालनकर्ताले (कियामतको दिन) सबैलाई एकत्रित गर्ने छ । निःसन्देह ऊ त बडो बुद्धिमतापूर्ण र ठूलो ज्ञाता छ ।

وَلَقَدْ خَلَقْنَا الْإِنسَانَ مِن صَلْصَالٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٢٦﴾

२६) निःसन्देह हामीले मानिसहरूलाई कट्कटिएर आवाज आउने सडेको कालो र ठोस माटोबाट बनाएका छौं ।

وَالْجَانَّ خَلَقْنَاهُ مِن قَبْلُ مِن نَّارِ السَّمُومِ ﴿٢٧﴾

२७) र जिन्नहरूलाई त्यसभन्दा पनि अघि धुँवा नभएको प्रज्वलित आगोबाट सृष्टि गरेका थियौं ।

وَإِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي خَالِقٌ بَشَرًا مِّن صَلْصَالٍ مِّنْ حَمَإٍ مَّسْنُونٍ ﴿٢٨﴾

२८) र तिम्रो पालनकर्ताले फरिश्ताहरूसित भन्योः "कि म कट्कटिएर अवाज आउने सडेको माटोबाट एउटा मानिसको सृष्टि गर्न गइराखेको छुँ ।"

فَإِذَا سَوَّيْتُهُ وَنَفَخْتُ فِيهِ مِن رُّوحِي فَقَعُوا لَهُ سَاجِدِينَ ﴿٢٩﴾

२९) जब उसलाई पूरा बनाई सक्छु र त्यसमा आफ्नो रूह फुँकीसक्छु तब उसको अगाडि सिज्दा गर्नु (ढोग्नु) ।

فَسَجَدَ الْمَلَائِكَةُ كُلُّهُمْ أَجْمَعُونَ ﴿٣٠﴾

३०) तसर्थ सबै फरिशताहरूले ढोग्न थाले ।

إِلَّآ إِبۡلِيسَ أَبَىٰٓ أَن يَكُونَ مَعَ ٱلسَّٰجِدِينَ ﴿٣١﴾

३१) तर इब्लीसले गरेन । उसले ढोग्नेहरू मध्ये शामिल हुनबाट इन्कार गऱ्यो ।

قَالَ يَٰٓإِبۡلِيسُ مَا لَكَ أَلَّا تَكُونَ مَعَ ٱلسَّٰجِدِينَ ﴿٣٢﴾

३२) (अल्लाहले) भन्नुभयो: कि इब्लीस तिमीलाई के भएको छ कि तिमी ढोग्नेहरूमा शम्मिलित भएनौ ।

قَالَ لَمۡ أَكُن لِّأَسۡجُدَ لِبَشَرٍ خَلَقۡتَهُۥ مِن صَلۡصَٰلٍ مِّنۡ حَمَإٖ مَّسۡنُونٖ ﴿٣٣﴾

३३) उसले भन्यो: म यस्तो छैन, कि तपाईले कट्कटिएर आवाज आउने सडेको माटोले बनाएका मानिस अगाडि झुकेर ढोगूँ ।

قَالَ فَٱخۡرُجۡ مِنۡهَا فَإِنَّكَ رَجِيمٞ ﴿٣٤﴾

३४) अल्लाहलको आदेश भयो, जन्नतबाट निस्किहाल, तँ तिरस्कृत र अभिशप्त भईस् ।

وَإِنَّ عَلَيۡكَ ٱللَّعۡنَةَ إِلَىٰ يَوۡمِ ٱلدِّينِ ﴿٣٥﴾

३५) र तिमीमाथि क़यामतको दिनसम्म धिक्कार छ ।

قَالَ رَبِّ فَأَنظِرۡنِيٓ إِلَىٰ يَوۡمِ يُبۡعَثُونَ ﴿٣٦﴾

३६) (त्यसले) भन्यो: कि हे पालनकर्ता ! मलाई त्यस दिनसम्मको छूटदेऊ, जब मानिसहरू (मृत्यु पश्चात) जीवित गरिनेछन् ।

قَالَ فَإِنَّكَ مِنَ ٱلۡمُنظَرِينَ ﴿٣٧﴾

३७) आदेश भयो कि तँलाई छूट दिइन्छ ।

إِلَىٰ يَوۡمِ ٱلۡوَقۡتِ ٱلۡمَعۡلُومِ ﴿٣٨﴾

३८) निर्धारित समय (क़यामत) को दिनसम्म ।

قَالَ رَبِّ بِمَآ أَغۡوَيۡتَنِي لَأُزَيِّنَنَّ لَهُمۡ فِي ٱلۡأَرۡضِ وَلَأُغۡوِيَنَّهُمۡ أَجۡمَعِينَ ﴿٣٩﴾

३९) (शैतानले) भन्यो: कि हे मेरो पालनकर्ता ! जस्तो कि तिमीले मलाई पथभ्रष्ट गरेका छौ, म पनि धर्तीमा मानिसहरूलाई पाप गर्न लगाउँछु, र सबैलाई सही बाटोबाट दिग्भ्रमित गराउँछु ।''

إِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِينَ ﴿٤٠﴾

४०) तर, तिनीहरू बाहेक जो तिम्रो ईमानदार भक्त छन् ।

قَالَ هَٰذَا صِرَاطٌ عَلَيَّ مُسْتَقِيمٌ ﴿٤١﴾

४१) (अल्लाहले) आदेश गर्नुभयो: कि म सम्म पुग्न यहि सोझो बाटो हो ।

إِنَّ عِبَادِي لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطَانٌ إِلَّا مَنِ اتَّبَعَكَ مِنَ الْغَاوِينَ ﴿٤٢﴾

४२) जो मेरा (सच्चा) भक्त छन् तिनीहरू माथि तिम्रो कुनै अधिकार हुने छैन तर ती दिग्भ्रम व्यक्तिहरू बाहेक जो नराम्रो बाटोमा तिम्रो पछि लाग्नेछन् ।

وَإِنَّ جَهَنَّمَ لَمَوْعِدُهُمْ أَجْمَعِينَ ﴿٤٣﴾

४३) निःसन्देह ती सबैलाई वचन दिएको ठाउँ नर्क हो ।

لَهَا سَبْعَةُ أَبْوَابٍ لِكُلِّ بَابٍ مِنْهُمْ جُزْءٌ مَقْسُومٌ ﴿٤٤﴾

४४) त्यसका सातवटा ढोकाहरू छन् । प्रत्येक ढोकाको लागि तिनीहरू मध्येबाट समूहहरू विभाजित गरिएका छन् ।

إِنَّ الْمُتَّقِينَ فِي جَنَّاتٍ وَعُيُونٍ ﴿٤٥﴾

४५) जो आत्मसंयमी छन्, तिनीहरू बगैंचाहरू र झरनाहरूको माझमा बस्नेछन् ।

ادْخُلُوهَا بِسَلَامٍ آمِنِينَ ﴿٤٦﴾

४६) (भनिनेछ कि) तिमीहरू शान्ति र सुरक्षासाथ प्रवेश गर ।

وَنَزَعْنَا مَا فِي صُدُورِهِمْ مِنْ غِلٍّ إِخْوَانًا عَلَىٰ سُرُرٍ مُتَقَابِلِينَ ﴿٤٧﴾

४७) र तिनीहरूको हृदयमा जे जति रिस र डाह छ, त्यसलाई हामीले सफा गरिदिनेछौं, तिनीहरू भाइ-भाइको रूपमा आसनहरूमा एक अर्काको साम्मु बसेका हुनेछन् ।

لَا يَمَسُّهُمْ فِيهَا نَصَبٌ وَمَا هُمْ مِنْهَا بِمُخْرَجِينَ ﴿٤٨﴾

४८) तिनीहरूलाई त्यहाँ न कुनै कष्ट हुनेछ र न त तिनीहरू त्यहाँबाट कहिले निष्कासित गरिनेछन् ।

४९) (हे पैगम्बर !) मेरा भक्तजनहरूलाई भनिदिनुस्: कि म बडो क्षमादाता र दयावान छुँ ।

نَبِّئْ عِبَادِيٓ أَنِّيٓ أَنَا ٱلْغَفُورُ ٱلرَّحِيمُ ﴿٤٩﴾

५०) र साथै यो: कि मेरो सजाय पनि धेरै कष्टदायक हुनेछ ।

وَأَنَّ عَذَابِي هُوَ ٱلْعَذَابُ ٱلْأَلِيمُ ﴿٥٠﴾

५१) र तिनीहरूलाई इब्राहीमका अतिथिहरूको बारेमा सुनाइदिनुस् ।

وَنَبِّئْهُمْ عَن ضَيْفِ إِبْرَٰهِيمَ ﴿٥١﴾

५२) कि जब तिनीहरूले इब्राहीमका साम् आएर "सलाम" भने त उनले भने कि हामीलाई तिमीसित डर लाग्छ ।

إِذْ دَخَلُوا۟ عَلَيْهِ فَقَالُوا۟ سَلَٰمًا قَالَ إِنَّا مِنكُمْ وَجِلُونَ ﴿٥٢﴾

५३) (अतिथिहरूले) भने: "कि, न तर्सनुस्, हामीले तपाईलाई एउटा ज्ञानी छोरोको शुभ सन्देश दिन्छौं ।"

قَالُوا۟ لَا تَوْجَلْ إِنَّا نُبَشِّرُكَ بِغُلَٰمٍ عَلِيمٍ ﴿٥٣﴾

५४) (उनले) भने: कि "मलाई बृद्ध अवस्थाले समातेपछि तिमीहरूले मलाई शुभ-समाचार दिन्छौ ? कुन कुरोको आधारमा तिमीले यो शुभ समाचार दिन्छौ ?"

قَالَ أَبَشَّرْتُمُونِي عَلَىٰٓ أَن مَّسَّنِيَ ٱلْكِبَرُ فَبِمَ تُبَشِّرُونَ ﴿٥٤﴾

५५) तिनीहरूले भने: कि हामी तपाईलाई एकदम साँचो शुभ-समाचार दिएका छौं । तपाई निराश नहुनुहोस् ।

قَالُوا۟ بَشَّرْنَٰكَ بِٱلْحَقِّ فَلَا تَكُن مِّنَ ٱلْقَٰنِطِينَ ﴿٥٥﴾

५६) (इब्राहीमले) भने: कि अल्लाहको कृपाबाट निराश हुनु त पथ विचलित हुनेहरूको काम हो ।

قَالَ وَمَن يَقْنَطُ مِن رَّحْمَةِ رَبِّهِۦٓ إِلَّا ٱلضَّآلُّونَ ﴿٥٦﴾

५७) अनि सोधे कि अल्लाहले पठाएको फरिश्ताहरू ! तिमीहरूलाई यस्तो के महत्वपूर्ण काम छ ?

قَالَ فَمَا خَطْبُكُمْ أَيُّهَا ٱلْمُرْسَلُونَ ﴿٥٧﴾

قَالُوٓا إِنَّآ أُرْسِلْنَآ إِلَىٰ قَوْمٍ مُّجْرِمِينَ ﴿٥٨﴾

५८) तिनीहरूले भने कि हामी एउटा अपराधी समुदायतिर पठाईएका हौं ।

إِلَّآ ءَالَ لُوطٍ إِنَّا لَمُنَجُّوهُمْ أَجْمَعِينَ ﴿٥٩﴾

५९) तर "लूतको" परिवार बाहेक कि उनीहरूलाई हामीले बचाई हाल्नेछौं ।

إِلَّا ٱمْرَأَتَهُۥ قَدَّرْنَآ إِنَّهَا لَمِنَ ٱلْغَٰبِرِينَ ﴿٦٠﴾

६०) तर लूतकी स्वास्नी बाहेक जसको निम्ति निश्चित गरेका छौं कि त्यो पछि रहनेछे ।

فَلَمَّا جَآءَ ءَالَ لُوطٍ ٱلْمُرْسَلُونَ ﴿٦١﴾

६१) अनि जब पठाइएका फरिश्ताहरू "लूतको" घर नजीक आई पुगे ।

قَالَ إِنَّكُمْ قَوْمٌ مُّنكَرُونَ ﴿٦٢﴾

६२) तब लूतले भने: "तिमीहरू त अन्जान मानिस जस्तै छौ ।"

قَالُوا۟ بَلْ جِئْنَٰكَ بِمَا كَانُوا۟ فِيهِ يَمْتَرُونَ ﴿٦٣﴾

६३) तिनीहरूले भने: कि होइन, बरु हामी तपाईको सामु त्यो कुरा लिएर आएका छौं जसमा मानिसहरूले शंका गर्दथे ।

وَأَتَيْنَٰكَ بِٱلْحَقِّ وَإِنَّا لَصَٰدِقُونَ ﴿٦٤﴾

६४) र हामी तपाईको सामु वास्तविक कुरो लिएर अएका छौं र हामी सत्य भन्दछौं ।

فَأَسْرِ بِأَهْلِكَ بِقِطْعٍ مِّنَ ٱلَّيْلِ وَٱتَّبِعْ أَدْبَٰرَهُمْ وَلَا يَلْتَفِتْ مِنكُمْ أَحَدٌ وَٱمْضُوا۟ حَيْثُ تُؤْمَرُونَ ﴿٦٥﴾

६५) तसर्थ तपाई रात्रीको केही अंश शेष रहँदा घरका मानिसहरूलाई लिएर निस्कनुस् र स्वयम् उनीहरूको पछाडि हिंड्नुस् र तपाईहरू मध्ये कुनै पनि व्यक्तिले पछि फर्केर नहेरोस् र जहाँ तपाईहरूलाई आदेश हुन्छ त्यहाँ गइहाल्नुस् ।

وَقَضَيْنَآ إِلَيْهِ ذَٰلِكَ ٱلْأَمْرَ أَنَّ دَابِرَ هَٰٓؤُلَآءِ مَقْطُوعٌ مُّصْبِحِينَ ﴿٦٦﴾

६६) र हामीले लूततिर यो आदेश पठाएका छौं, कि यी अपराधिहरूको जरा विहान हुँदा हुँदै काटिनेछ ।

وَجَآءَ اَهۡلُ الۡمَدِيۡنَةِ يَسۡتَبۡشِرُوۡنَ ﴿٦٧﴾

६७) र शहरका मानिसहरूले खुशियाली मनाउँदै आइपुगे ।

قَالَ اِنَّ هٰٓؤُلَآءِ ضَيۡفِىۡ فَلَا تَفۡضَحُوۡنِ ﴿٦٨﴾

६८) लूतले भने कि यी मेरा अतिथिहरू हुन्, तिमीले मलाई अपमानित नगर्नु ।

وَاتَّقُوا اللّٰهَ وَلَا تُخۡزُوۡنِ ﴿٦٩﴾

६९) अल्लाहसित डरमान र मलाई लज्जित नगर्नु ।

قَالُوۡۤا اَوَلَمۡ نَنۡهَكَ عَنِ الۡعٰلَمِيۡنَ ﴿٧٠﴾

७०) तिनीहरूले भने: के हामीले तिमीलाई सम्पूर्ण संसारको सत्कारबाट मनाहि गरेनौं ?

قَالَ هٰٓؤُلَآءِ بَنٰتِىۡۤ اِنۡ كُنۡتُمۡ فٰعِلِيۡنَ ﴿٧١﴾

७१) (उनले) भने: कि यदि तिमीले गर्नु नै छ भने यी मेरो छोरीहरू हुन्, ( विवाह गरिहाल)

لَعَمۡرُكَ اِنَّهُمۡ لَفِىۡ سَكۡرَتِهِمۡ يَعۡمَهُوۡنَ ﴿٧٢﴾

७२) (हे मोहम्मद स. अ. !) तिम्रो प्राणको कसम ! तिनीहरू त नशामा उन्मत्त थिए ।

فَاَخَذَتۡهُمُ الصَّيۡحَةُ مُشۡرِقِيۡنَ ﴿٧٣﴾

७३) तसर्थ तिनीहरूलाई सूर्य उदाई राखेकै बेलामा ठूलो धामाकाले आई समात्यो ।

فَجَعَلۡنَا عَالِيَهَا سَافِلَهَا وَاَمۡطَرۡنَا عَلَيۡهِمۡ حِجَارَةً مِّنۡ سِجِّيۡلٍ ﴿٧٤﴾

७४) र हामीले त्यस शहरलाई उल्टाई विनाश गरिहाल्यौं र तिनीहरूमाथि ढुंङ्गा बर्षायौं ।

اِنَّ فِىۡ ذٰلِكَ لَاٰيٰتٍ لِّلۡمُتَوَسِّمِيۡنَ ﴿٧٥﴾

७५) नि:सन्देह यस घटनामा बुझ्नेहरूका निम्ति धेरै निशानी छन् ।

وَاِنَّهَا لَبِسَبِيۡلٍ مُّقِيۡمٍ ﴿٧٦﴾

७६) यो बस्ती (अहिलेसम्म) चालु बाटोमा (सार्वजनिक मार्गमा) अवस्थित छ ।

اِنَّ فِىۡ ذٰلِكَ لَاٰيَةً لِّلۡمُؤۡمِنِيۡنَ ﴿٧٧﴾

७७) र त्यसमा ईमान भएका मानिसहरूका निम्ति ठूला निशानीहरू छन् ।

| | |
|---|---|
| ७८) ऐका (जंगल) बस्तीको बासिन्दाहरू पनि ठूलो अत्याचारी थिए । | وَإِن كَانَ أَصْحَٰبُ ٱلْأَيْكَةِ لَظَٰلِمِينَ ﴿٧٨﴾ |
| ७९) तसर्थ हामीले तिनीहरूसित पनि प्रतिशोध लियौं र यी दुवै शहरहरू प्रमुखमार्गमा (अवस्थित) छन् । | فَٱنتَقَمْنَا مِنْهُمْ وَإِنَّهُمَا لَبِإِمَامٍ مُّبِينٍ ﴿٧٩﴾ |
| ८०) र "हिज्र" (उपत्यका) का बासिन्दाहरूले पनि पैगम्बरहरूलाई झूठा भने । | وَلَقَدْ كَذَّبَ أَصْحَٰبُ ٱلْحِجْرِ ٱلْمُرْسَلِينَ ﴿٨٠﴾ |
| ८१) हामीले तिनीहरूलाई आफ्ना निशानीहरू पनि दियौं तर तिनीहरू त्यसबाट विमुख हुँदै गए । | وَءَاتَيْنَٰهُمْ ءَايَٰتِنَا فَكَانُوا۟ عَنْهَا مُعْرِضِينَ ﴿٨١﴾ |
| ८२) तिनीहरूले निडर भएर पहाडहरूलाई काटेर घर बनाउँदथे । | وَكَانُوا۟ يَنْحِتُونَ مِنَ ٱلْجِبَالِ بُيُوتًا ءَامِنِينَ ﴿٨٢﴾ |
| ८३) तर शक्तिशाली बिस्फोटले तिनीहरूलाई पनि समातिहाल्यो । | فَأَخَذَتْهُمُ ٱلصَّيْحَةُ مُصْبِحِينَ ﴿٨٣﴾ |
| ८४) तिनीहरूको कुनै काम र उपायले तिनीहरूको काम लागेन । | فَمَآ أَغْنَىٰ عَنْهُم مَّا كَانُوا۟ يَكْسِبُونَ ﴿٨٤﴾ |
| ८५) र हामीले आकाशहरू र धर्तीलाई र जुन तिनीहरूमा छन्, तिनलाई एउटा उद्देश्यले सृष्टि गरेका हौं र क़यामत त अवश्य नै आउनेछ, तसर्थ तिमीले तिनीहरूलाई दयापूर्ण तरिकाले क्षमा गरिदेऊ । | وَمَا خَلَقْنَا ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَآ إِلَّا بِٱلْحَقِّ ۗ وَإِنَّ ٱلسَّاعَةَ لَءَاتِيَةٌ ۖ فَٱصْفَحِ ٱلصَّفْحَ ٱلْجَمِيلَ ﴿٨٥﴾ |
| ८६) यसमा कुनै शंका छैन कि तिम्रो पालनकर्ता नै सृष्टि गर्नेवाला सर्वज्ञाता छ । | إِنَّ رَبَّكَ هُوَ ٱلْخَلَّٰقُ ٱلْعَلِيمُ ﴿٨٦﴾ |
| ८७) र निःसन्देह हामीले तपाईंलाई सात आयतहरू प्रदान गरेका छौं जुन | وَلَقَدْ ءَاتَيْنَٰكَ سَبْعًا مِّنَ ٱلْمَثَانِى وَٱلْقُرْءَانَ ٱلْعَظِيمَ ﴿٨٧﴾ |

कि (नमाजमा) दोहोऱ्याएर पढिन्छन् र गरिमापूर्ण कुरआन पनि प्रदान गरेका छौं ।

لَا تَمُدَّنَّ عَيْنَيْكَ إِلَىٰ مَا مَتَّعْنَا بِهِۦٓ أَزْوَٰجًا مِّنْهُمْ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَٱخْفِضْ جَنَاحَكَ لِلْمُؤْمِنِينَ ﴿٨٨﴾

८८) तपाईले त्यस तर्फ निश्चित रूपले आँखा न गाड्नुस् जुन हामीले काफिरहरूका कैयन् समूहलाई, (सांसरिक लाभहरू) प्रदान गरेका छौं, र न त उनीहरूको दशामाथि दुःखी हुनुस् र मोमिनहरूसित (विनम्रमा) आफ्नो हातहरू तल राखी राख्नुस् ।

وَقُلْ إِنِّىٓ أَنَا ٱلنَّذِيرُ ٱلْمُبِينُ ﴿٨٩﴾

८९) र भनिदिनुस् म त खुल्लम खुल्ला चेतावनी दिनेवाला हूँ ।

كَمَآ أَنزَلْنَا عَلَى ٱلْمُقْتَسِمِينَ ﴿٩٠﴾

९०) जस्तो हामीले किताब टुक्रा-टुक्रा गर्नेहरूका लागि (सजाय) पठायौं ।

ٱلَّذِينَ جَعَلُوا۟ ٱلْقُرْءَانَ عِضِينَ ﴿٩١﴾

९१) अर्थात जिनीहरूले "कुरआनलाई" (केही मान्नु र केही नमान्नुबाट) टुक्रा-टुक्रा गरिहाले ।

فَوَرَبِّكَ لَنَسْـَٔلَنَّهُمْ أَجْمَعِينَ ﴿٩٢﴾

९२) तिम्रो पालनकर्ताको शपथ छ ! हामीले तिनीहरूसित अवश्य नै सोधपूछ गर्ने छौं ।

عَمَّا كَانُوا۟ يَعْمَلُونَ ﴿٩٣﴾

९३) ती कामहरूको बोरमा, जुन तिनीहरू गर्दै आएका छन् ।

فَٱصْدَعْ بِمَا تُؤْمَرُ وَأَعْرِضْ عَنِ ٱلْمُشْرِكِينَ ﴿٩٤﴾

९४) तसर्थ जुन आदेश तपाईलाई प्राप्त भएको छ त्यो स्पष्टरूपमा सुनाई दिनुस् र मुशरिकहरूसंग मुख फर्काई लिनुस् ।

إِنَّا كَفَيْنَٰكَ ٱلْمُسْتَهْزِءِينَ ﴿٩٥﴾

९५) जो तपाईसँग मजाक गर्छन् उनीहरूको सजायको लागि हामी पर्याप्त छौं ।

ٱلَّذِينَ يَجْعَلُونَ مَعَ ٱللَّهِ إِلَٰهًا ءَاخَرَ ۚ فَسَوْفَ يَعْلَمُونَ ﴿٩٦﴾

९६) जसले अल्लाहको साथमा अरुलाई पूजनीय ठान्दछन्, तिनीहरूलाई छिटै थाहा भइहाल्ने छ ।

وَلَقَدْ نَعْلَمُ أَنَّكَ يَضِيقُ صَدْرُكَ بِمَا يَقُولُونَ ﴿٩٧﴾

९७) हामीलाई राम्ररी थाहा छ, कि तिनीहरूको कुराबाट तपाईको मन कति दिक्क हुन्छ ?

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَكُن مِّنَ ٱلسَّٰجِدِينَ ﴿٩٨﴾

९८) तपाईले आफ्नो पालनहारको गुणगान गर्दै गर्नुस् र सजदा (ढोग) गर्नैहरूमा शम्मिलित रहनुस् ।

وَٱعْبُدْ رَبَّكَ حَتَّىٰ يَأْتِيَكَ ٱلْيَقِينُ ﴿٩٩﴾

९९) र आफ्नो पालनकर्ताको उपासना गर्दै जानुस्, जबसम्म तपाईको मृत्यु हुँदैन ।



# सूरतुन् नहल-१६




सूरतुन् नहल मक्की हो र यसमा १२८ आयतहरू र १६ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू अल्लाहको नामबाट जो अत्यन्त दयालु र ठूलो कृपालु छ ।**

اَتٰۤى اَمْرُ اللّٰهِ فَلَا تَسْتَعْجِلُوْهُ ؕ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ①

१) अल्लाहको आदेश (सजाय) आइपुग्यो, (काफिरहरू) यसको निम्ति हतार नगर ऊ पवित्र छ र जसलाई अल्लाहको साझेदार ठहराउँदछन् तिनी भन्दा अल्लाह उच्च छ ।

يُنَزِّلُ الْمَلٰٓئِكَةَ بِالرُّوْحِ مِنْ اَمْرِهٖ عَلٰى مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖۤ اَنْ اَنْذِرُوْۤا اَنَّهٗ لَاۤ اِلٰهَ اِلَّاۤ اَنَا فَاتَّقُوْنِ ②

२) उसैले फरिश्ताहरूलाई सन्देश दिई आफ्नो आदेशले आफ्ना भक्तहरू मध्येबाट, जसलाई चाहन्छ त्यसको नजिक पठाउँछ । मानिसहरूलाई सचेत गर्न ! कि म (अल्लाह) बाहेक कोही अर्को सत्य पूजनीय छैन, तसर्थ मसित डर ।

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ؕ تَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ③

३) उसैले आकाशहरूलाई र पृथ्वीलाई बुद्धिमत्ताले सृष्टि गरेको छ । ऊ यसबाट मुक्त छ जुन मुश्रिकहरूले गर्दछन् ।

خَلَقَ الْاِنْسَانَ مِنْ نُّطْفَةٍ فَاِذَا هُوَ خَصِيْمٌ مُّبِيْنٌ ④

४) उसले मानिसलाई शुक्राणु (वीर्य) बाट सृष्टि गर्‍यो, तर तिनीले झगडालु बन्न थाले ।

وَالْاَنْعَامَ خَلَقَهَا ۚ لَكُمْ فِيْهَا دِفْءٌ وَّمَنَافِعُ وَمِنْهَا تَاْكُلُوْنَ ⑤

५) चौपायाहरूलाई पनि उसैले सृष्टि गरेको छ, जसबाट तिमीहरूलाई गर्म पहिरन प्राप्त हुन्छ र अन्य धेरै

फाइदाहरू छन् र यिनीहरू मध्ये केहिलाई तिमीले खान्छौ पनि ।

وَلَكُمْ فِيهَا جَمَالٌ حِينَ تُرِيحُونَ وَحِينَ تَسْرَحُونَ ۝٦

६) र यिनीहरूबाट घरको रौनक पनि हुन्छ, चराउन लैजाँदा र चराएर घर फर्काएर ल्याउँदा पनि ।

وَتَحْمِلُ أَثْقَالَكُمْ إِلَىٰ بَلَدٍ لَّمْ تَكُونُوا بَالِغِيهِ إِلَّا بِشِقِّ الْأَنفُسِ ۚ إِنَّ رَبَّكُمْ لَرَءُوفٌ رَّحِيمٌ ۝٧

७) र तिनीहरूले तिम्रो भारी ती शहरहरू सम्म बोक्छन्, जहाँ तिमी ठूलो दुःख नगरी पुग्न सक्दैनौं । यसमा कुनै सन्देह छैन कि तिम्रो पालनकर्ता अत्यन्त कृपालु, धेरै दयावान छ ।

وَالْخَيْلَ وَالْبِغَالَ وَالْحَمِيرَ لِتَرْكَبُوهَا وَزِينَةً ۚ وَيَخْلُقُ مَا لَا تَعْلَمُونَ ۝٨

८) र उसैले घोडा र खच्चड तथा गधहाहरूको सृष्टि गऱ्यो ताकि तिमीहरू उनीहरूमाथि चढि सवारी गर्न सक, र तिनीहरू तिम्रा शोभा पनि हुन् र उसले अन्य कुराहरू पनि सृष्टि गर्दछ जसबारे तिमीलाई थाहा छैन ।

وَعَلَى اللَّهِ قَصْدُ السَّبِيلِ وَمِنْهَا جَائِرٌ ۚ وَلَوْ شَاءَ لَهَدَاكُمْ أَجْمَعِينَ ۝٩

९) र सोझो बाटो त अल्लाहसम्म पुग्दछ र केहि बाटाहरू बाङ्गो पनि छन् । र यदि उसले चाहेको भए तिमी सबैलाई सोझो बाटोमा हिंडाउन सक्थ्यो ।

هُوَ الَّذِي أَنزَلَ مِنَ السَّمَاءِ مَاءً ۖ لَّكُم مِّنْهُ شَرَابٌ وَمِنْهُ شَجَرٌ فِيهِ تُسِيمُونَ ۝١٠

१०) उसैले आकाशहरूबाट तिम्रो फाइदाको लागि पानी बर्षायो जसलाई तिमीले पिउँछौं र त्यसबाट उब्जेका रुखहरूबाट तिमी आफ्ना चौपायाहरू चराउँछौं ।

११) त्यही पानीबाट उसले तिम्रो निम्ति बाली र जैतून, खजूर र अंगूर र प्रत्येक प्रकारको फल उमार्छ निःसन्देह सोच र बिचार गर्नेहरूको निमित्त यसमा ठूलो निशानी छ ।

يُنْۢبِتُ لَكُمْ بِهِ الزَّرْعَ وَالزَّيْتُوْنَ وَالنَّخِيْلَ وَالْاَعْنَابَ وَمِنْ كُلِّ الثَّمَرٰتِ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ۝١١

१२) उसैले राती र दिन तथा सूर्य र चन्द्रलाई तिम्रो अधीन गऱ्यो र उसैको आदेशको अधीनमा ताराहरू पनि (काममा लागेका) छन् निःसन्देह बुद्धिमानहरूको लागि यसमा धेरै निशानीहरू छन् ।

وَسَخَّرَ لَكُمُ الَّيْلَ وَالنَّهَارَ ۙ وَالشَّمْسَ وَالْقَمَرَ ؕ وَالنُّجُوْمُ مُسَخَّرٰتٌۢ بِاَمْرِهٖ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ۝١٢

१३) अरु पनि विभिन्न प्रकारका रङ्गीचङ्गी कुराहरू उसले धर्तीमा तिम्रो लागि सृष्टि गरेको छ। उपदेश ग्रहण गर्नेहरूको निम्ति यसमा धेरै निशानीहरू छन् ।

وَمَا ذَرَاَ لَكُمْ فِي الْاَرْضِ مُخْتَلِفًا اَلْوَانُهٗ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّذَّكَّرُوْنَ ۝١٣

१४) र उसले समुद्रलाई पनि तिम्रो अधीनमा गऱ्यो जसबाट ताजा मासु खान सक र त्यसबाट गहना (इत्यादि) निकाल जसलाई तिमीले लगाउँछौं र तिमीले देख्छौ कि डुङ्गाहरूले समुद्रमा पानी पन्छ्याउँदै अगाडि बढ्छन् र यस कारण पनि ताकि तिमीले अल्लाहको कृपाले जीविका खोज्न सक र जसबाट सम्भव छ तिमी उसप्रति आभार प्रकट गर ।

وَهُوَ الَّذِيْ سَخَّرَ الْبَحْرَ لِتَاْكُلُوْا مِنْهُ لَحْمًا طَرِيًّا وَّتَسْتَخْرِجُوْا مِنْهُ حِلْيَةً تَلْبَسُوْنَهَا ۚ وَتَرَى الْفُلْكَ مَوَاخِرَ فِيْهِ وَلِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ۝١٤

१५) र उसैले धर्तीमा पहाडहरू उभ्याइदियो जसबाट तिमीलाई लिएर

وَاَلْقٰى فِي الْاَرْضِ رَوَاسِيَ اَنْ تَمِيْدَ بِكُمْ وَاَنْهٰرًا وَّسُبُلًا لَّعَلَّكُمْ تَهْتَدُوْنَ ۝١٥

नहल्लीयोस् र नहरहरू र बाटोहरू बनायो ताकि एक ठाउँबाट अर्को ठाँउसम्म जान सक ।

وَعَلٰمٰتٍ ۭ وَبِالنَّجْمِ هُمْ يَهْتَدُوْنَ ⑯

१६) अरु पनि (बाटोहरूमा) चिन्हहरू बनाइदियो र मानिसहरूले ताराहरूबाट पनि मार्गहरू पत्ता लगाउँछन् ।

اَفَمَنْ يَّخْلُقُ كَمَنْ لَّا يَخْلُقُ ۭ اَفَلَا تَذَكَّرُوْنَ ⑰

१७) तसर्थ जसले सृष्टि गर्‍यो, के त्यो यस्तो छ जसले केहि पनि सृष्टि गर्न सक्दैन ? अनि तिमीले विचार किन गर्दैनौ ?

وَاِنْ تَعُدُّوْا نِعْمَةَ اللّٰهِ لَا تُحْصُوْهَا ۭ اِنَّ اللّٰهَ لَغَفُوْرٌ رَّحِيْمٌ ⑱

१८) र यदि तिमी अल्लाहका कृपाहरू गन्न चाहन्छौ भने गन्न सक्दैनौ । निःसन्देह अल्लाह बड़ो क्षमाशील र परम दयालु छ ।

وَاللّٰهُ يَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ⑲

१९) र जे जति तिमीले लुकाउँछौ र जे-जति प्रकट गर्दछौ अल्लाहलाई सबै थाहा छ ।

وَالَّذِيْنَ يَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ لَا يَخْلُقُوْنَ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ ⑳

२०) र जस, जसलाई यिनीहरू अल्लाह बाहेक पुकार्दछन्, तिनीहरूले कुनै पनि कुरा बनाउन सक्दैनन् बरु स्वयं उनीहरू अरुबाट बनाइएका छन् ।

اَمْوَاتٌ غَيْرُ اَحْيَاۗءٍ ۚ وَمَا يَشْعُرُوْنَ ۙ اَيَّانَ يُبْعَثُوْنَ ㉑

२१) (तिनीहरू) लाश हुन्, जिउँदा होइनन् तिनीहरूलाई यो पनि थाहा छैन कि कहिले उठाइनेछन् ।

اِلٰـهُكُمْ اِلٰهٌ وَّاحِدٌ ۚ فَالَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ قُلُوْبُهُمْ مُّنْكِرَةٌ وَّهُمْ مُّسْتَكْبِرُوْنَ ㉒

२२) तिमी सबैको पूजनीय एक मात्र अल्लाह हो, जो आखिरतमाथि ईमान राख्दैनन्, तिनीहरूका हृदय

अवज्ञाकारी छन् र तिनीहरू स्वयम् घमन्डी भइराखेका छन् ।

لَا جَرَمَ أَنَّ اللَّهَ يَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ۚ إِنَّهُ لَا يُحِبُّ الْمُسْتَكْبِرِينَ ﴿٢٣﴾

२३) यिनीहरूले जे लुकाउँछन् र जे प्रकट गर्छन अल्लाहलाई अवश्य त्यसबारे थाहा हुन्छ । उसले घमण्डीहरूलाई कहिल्यै रुचाउँदैन ।

وَإِذَا قِيلَ لَهُمْ مَاذَا أَنْزَلَ رَبُّكُمْ ۙ قَالُوا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٢٤﴾

२४) र जब यी (काफिरहरूलाई) भनिन्छः कि "तिम्रो पालनकर्ताले के उतारेको छ ? त भन्दछन्:" कि त्यो त पहिलाका मानिसहरूका कथाहरू हुन् ।

لِيَحْمِلُوا أَوْزَارَهُمْ كَامِلَةً يَوْمَ الْقِيَامَةِ ۙ وَمِنْ أَوْزَارِ الَّذِينَ يُضِلُّونَهُمْ بِغَيْرِ عِلْمٍ ۗ أَلَا سَاءَ مَا يَزِرُونَ ﴿٢٥﴾

२५) यसैको परिणाम हुनेछ कि तिनीहरूले कियामतको दिन आफ्नो सम्पूर्ण बोझ आफै बोक्ने छन् र जसलाई यिनले ज्ञान नभइकन् मार्ग विचलित गर्दछन्, तिनीहरूको पनि भारी बोक्ने छन् हेर त कस्तो नराम्रा वोझ उठाई राखेका छन् ।

قَدْ مَكَرَ الَّذِينَ مِنْ قَبْلِهِمْ فَأَتَى اللَّهُ بُنْيَانَهُمْ مِنَ الْقَوَاعِدِ فَخَرَّ عَلَيْهِمُ السَّقْفُ مِنْ فَوْقِهِمْ وَأَتَاهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُونَ ﴿٢٦﴾

२६) यिनीभन्दा पहिलाका मानिसले पनि (यस्तै) षड्यन्त्रहरू गरेका थिए, अन्तमा अल्लाहले तिनीहरूको कल्पनाका महलहरूलाई जगबाटै उखेली दियो र तिनीहरूमाथि घरका छतहरू खसे र यिनीहरूलाई त्यस्तो ठाउँबाट सजाय आयो जसबारे उनलाई अनुमान पनि थिएन ।

ثُمَّ يَوْمَ الْقِيَامَةِ يُخْزِيهِمْ وَيَقُولُ أَيْنَ شُرَكَائِيَ الَّذِينَ كُنْتُمْ تُشَاقُّونَ فِيهِمْ ۚ قَالَ الَّذِينَ أُوتُوا الْعِلْمَ إِنَّ الْخِزْيَ الْيَوْمَ وَالسُّوءَ عَلَى الْكَافِرِينَ ﴿٢٧﴾

२७) अनि उसले तिनीहरूलाई क़यामतको दिन पनि अपमानित गर्नेछ र भन्ने छः "कि मेरा ती साझेदारहरू कहाँ छन् ? जसको बारेमा तिमीहरूले

विवाद गर्दथ्यो ?" जुन मानिसहरूलाई ज्ञान प्रदान गरिएको थियो तिनीहरूले भन्नेछन् कि आज काफिरहरूलाई अपमान र लज्जाले छोपेको छ ।

الَّذِينَ تَتَوَفَّاهُمُ الْمَلَائِكَةُ ظَالِمِي أَنْفُسِهِمْ ۖ فَأَلْقَوُا السَّلَمَ مَا كُنَّا نَعْمَلُ مِنْ سُوءٍ ۚ بَلَىٰ إِنَّ اللَّهَ عَلِيمٌ بِمَا كُنْتُمْ تَعْمَلُونَ ﴿٢٨﴾

२८) तिनीहरू जो आफ्नै माथि अत्याचार गर्दछन् जब फरिशताहरूले तिनीहरूका ज्यान निकाल्न थाल्छन् त तिनीहरू नतमस्तक र आज्ञाकारी भइहाल्छन् (भन्दछन्): कि हामीले कुनै नराम्रो काम गर्दैनथ्यौं । तर जे-जति तिमीले गर्ने गर्दथ्यौ अल्लाहलाई राम्ररी थाहा छ ।

فَادْخُلُوا أَبْوَابَ جَهَنَّمَ خَالِدِينَ فِيهَا ۖ فَلَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِينَ ﴿٢٩﴾

२९) तसर्थ नर्कका ढोकाहरूमा तिमीहरू प्रवेश गरिहाल, सधैं त्यसमा रहने छौ, घमण्ड गर्नेहरूको लागि कति नराम्रो बासस्थान हो ।

وَقِيلَ لِلَّذِينَ اتَّقَوْا مَاذَا أَنْزَلَ رَبُّكُمْ ۚ قَالُوا خَيْرًا ۗ لِلَّذِينَ أَحْسَنُوا فِي هَٰذِهِ الدُّنْيَا حَسَنَةٌ ۚ وَلَدَارُ الْآخِرَةِ خَيْرٌ ۚ وَلَنِعْمَ دَارُ الْمُتَّقِينَ ﴿٣٠﴾

३०) र (जब) सहनशीलसित सोधिन्छः कि तिम्रो पालनकर्ताले के उत्तारेको छ त भन्दछन् कि अत्यन्त राम्रा, जुन मानिसहरूले भलाई गरे तिनीहरूको निम्ति यस संसारमा पनि भलाई छ र आखिरतको घर त अवश्य धेरै राम्रो छ, र संयमीहरूको घर अत्यन्त राम्रो छ ।

جَنَّاتُ عَدْنٍ يَدْخُلُونَهَا تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ ۖ لَهُمْ فِيهَا مَا يَشَاءُونَ ۚ كَذَٰلِكَ يَجْزِي اللَّهُ الْمُتَّقِينَ ﴿٣١﴾

३१) स्थाई बगैंचाहरू छन् जसमा तिनीहरू प्रवेश गर्नेछन्, तिनीहरूतल नहरहरू बगिराखेका छन् त्यहाँ जे चाहन्छन् तिनीहरूको निम्ति उपलब्ध

हुनेछन् । अल्लाहले संयमीहरूलाई यस्तै प्रतिफल दिनेछ ।

الَّذِينَ تَتَوَفّٰىهُمُ الْمَلٰٓئِكَةُ طَيِّبِينَ ۙ يَقُولُونَ سَلٰمٌ عَلَيْكُمُ ادْخُلُوا الْجَنَّةَ بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٣٢﴾

३२) जब फरिश्ताहरूले तिनीहरूका आत्मा निकाल्न थाल्छन् र यिनीहरू (शीर्कबाट) पवित्र हुन्छन्, भन्दछन तिम्रो लागि कुशलता नै कुशलता छ र भन्दछन् कि जुन कार्य तिमीले गर्ने गर्दथ्यो, त्यसको फलस्वरूप स्वर्गमा प्रवेश गरिहाल ।

هَلْ يَنظُرُونَ إِلَّآ أَن تَأْتِيَهُمُ الْمَلٰٓئِكَةُ أَوْ يَأْتِيَ أَمْرُ رَبِّكَ ۚ كَذٰلِكَ فَعَلَ الَّذِينَ مِن قَبْلِهِمْ ۚ وَمَا ظَلَمَهُمُ اللّٰهُ وَلٰكِن كَانُوٓا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٣٣﴾

३३) के यिनी यस कुराको प्रतिक्षमा छन् कि फरिश्ताहरू उनको समीप (प्राण निकाल्न) आउन् वा तिम्रो पालनकर्ताको आदेश आइपुगोस् । यस्तै तिनीहरूले पनि गरेका थिए जो उनीभन्दा पहिला थिए र अल्लाहले उनीहरूमाथि कुनै अत्याचार गरेन, बरु तिनीहरू आफैले आफूहरूमाथि अत्याचार गर्दथे ।

فَأَصَابَهُمْ سَيِّـَٔاتُ مَا عَمِلُوا وَحَاقَ بِهِم مَّا كَانُوا بِهِۦ يَسْتَهْزِءُونَ ﴿٣٤﴾

३४) तसर्थ तिनीहरूका नराम्रो कामको परिणाम तिनीहरूलाई प्राप्त भयो र जुन कुराको तिनीहरूले हाँसो गर्ने गर्दथे, त्यसले तिनीहरूलाई घेरिहाल्यो

وَقَالَ الَّذِينَ أَشْرَكُوا لَوْ شَآءَ اللّٰهُ مَا عَبَدْنَا مِن دُونِهِۦ مِن شَيْءٍ نَّحْنُ وَلَآ اٰبَآؤُنَا وَلَا حَرَّمْنَا مِن دُونِهِۦ مِن شَيْءٍ ۚ كَذٰلِكَ فَعَلَ الَّذِينَ مِن قَبْلِهِمْ ۚ فَهَلْ عَلَى الرُّسُلِ إِلَّا الْبَلٰغُ الْمُبِينُ ﴿٣٥﴾

३५) मुश्रिकहरूले भने कि अल्लाहले चाहेको भए हामीले र हाम्रा बाबुबाजेले उसबाहेक अरु कसैको पूजा गर्ने थिएनन् र नत हामीले उसको आदेश बिना कुनै कुरालाई हराम (वर्जित) ठहराउँथ्यौं । (हे

पैगम्बर !) यस्तै प्रकारले यिनीहरू भन्दा अगाडिका मानिसहरूले पनि गरेका थिए, तसर्थ पैगम्बरहरूको जिम्मामा मात्र स्पष्ट रूपले सन्देश पुऱ्याइदिनु बाहेक अरु केही छ ?

وَلَقَدْ بَعَثْنَا فِي كُلِّ أُمَّةٍ رَّسُولًا أَنِ اعْبُدُوا اللَّهَ وَاجْتَنِبُوا الطَّاغُوتَ ۖ فَمِنْهُم مَّنْ هَدَى اللَّهُ وَمِنْهُم مَّنْ حَقَّتْ عَلَيْهِ الضَّلَالَةُ ۚ فَسِيرُوا فِي الْأَرْضِ فَانظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿٣٦﴾

३६) हामीले हरेक समुदायमा पैगम्बर पठायौं कि मानिसहरू अल्लाहकै पूजा गरुन्, र उस बाहेक अन्य समस्त पुज्यहरूलाई त्यागिहालुन् अनि तिनीहरू मध्ये केही यस्ता छन्, जसलाई अल्लाहले मार्ग दर्शन गऱ्यो र केही यस्ता छन जो मार्ग विचलनमा परे । तसर्थ तिमी स्वयम् पृथ्वीमा घुमफिर गरेर हेरिहाल कि (सत्यलाई) झूठो भन्नेहरूको परिणाम कस्तो भयो ?

إِن تَحْرِصْ عَلَىٰ هُدَاهُمْ فَإِنَّ اللَّهَ لَا يَهْدِي مَن يُضِلُّ ۖ وَمَا لَهُم مِّن نَّاصِرِينَ ﴿٣٧﴾

३७) यद्यपि तपाई यी काफिरहरूको पथप्रदर्शनको लागि इच्छुक भए पनि जसलाई अल्लाहले पथविचलित गर्छ, त्यसलाई मार्गदर्शन दिने गर्दैन, र यस्ता मानिसहरूको कोही सहायता गर्ने पनि हुँदैन ।

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ ۙ لَا يَبْعَثُ اللَّهُ مَن يَمُوتُ ۚ بَلَىٰ وَعْدًا عَلَيْهِ حَقًّا وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٣٨﴾

३८) तिनीहरूले ठूल-ठूला शपथहरू खाएर भन्छन् कि मरेकाहरूलाई अल्लाहले जीवित गर्दैन । किन होइन ! अवश्य जिन्दा गर्नेछ । यो अल्लाहको एउटा सत्य वचन हो जसलाई उसले अवश्य पूरा गर्ने छ तर अधिकतर मानिसहरू जान्दैनन् ।

لِيُبَيِّنَ لَهُمُ الَّذِي يَخْتَلِفُونَ فِيهِ وَلِيَعْلَمَ الَّذِينَ كَفَرُوا أَنَّهُمْ كَانُوا كَاذِبِينَ ﴿٣٩﴾

३९) त्यसकारण पनि कि जुन कुरामा यिनीहरूले विवाद गर्दथे, त्यस कुरालाई स्पष्टसँग अल्लाहले वर्णन गरोस् र यस कारण पनि कि काफिरहरूले जानिहालुन् कि तिनीहरू झूठा थिए ।

إِنَّمَا قَوْلُنَا لِشَيْءٍ إِذَا أَرَدْنَاهُ أَنْ نَقُولَ لَهُ كُنْ فَيَكُونُ ﴿٤٠﴾

४०) जब हामीले कुनै कुराको इच्छा गर्दछौं त यति मात्र भनिदिन्छौं कि "भइहाल" अनि त्यो भइहाल्छ ।

وَالَّذِينَ هَاجَرُوا فِي اللَّهِ مِنْ بَعْدِ مَا ظُلِمُوا لَنُبَوِّئَنَّهُمْ فِي الدُّنْيَا حَسَنَةً ۖ وَلَأَجْرُ الْآخِرَةِ أَكْبَرُ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ﴿٤١﴾

४१) र जुन मानिसहरूले अत्याचार सहेपछि अल्लाहको बाटोमा घरद्वार छाड़े, हामीले तिनीहरूलाई संसारमा राम्रो भन्दा राम्रो घर दिनेछौं, र आखिरतको पुरस्कार त निकै ठूलो छ तर काश ! तिनीहरूले बुझ्दथे ।

الَّذِينَ صَبَرُوا وَعَلَىٰ رَبِّهِمْ يَتَوَكَّلُونَ ﴿٤٢﴾

४२) (अर्थात) ती मानिसहरू जसले धैर्य गरे र आफ्नो पालनकर्तामाथि नै भरोसा गर्दै रहे ।

وَمَا أَرْسَلْنَا مِنْ قَبْلِكَ إِلَّا رِجَالًا نُوحِي إِلَيْهِمْ ۚ فَاسْأَلُوا أَهْلَ الذِّكْرِ إِنْ كُنْتُمْ لَا تَعْلَمُونَ ﴿٤٣﴾

४३) र हामीले तपाई भन्दा पहिला पनि पुरुषहरूलाई नै पैगम्बर बनाएर पठाउने गरेका थियौं, जिनीहरूमाथि हामीले आफ्नो आदेश पठाउने गर्दथ्यौं । यदि तिमीहरूलाई थाहा छैन भने किताबका ज्ञाताहरू सित सोधिहाल ।

بِالْبَيِّنَاتِ وَالزُّبُرِ ۗ وَأَنْزَلْنَا إِلَيْكَ الذِّكْرَ لِتُبَيِّنَ لِلنَّاسِ مَا نُزِّلَ إِلَيْهِمْ وَلَعَلَّهُمْ يَتَفَكَّرُونَ ﴿٤٤﴾

४४) प्रमाणहरू र किताबहरू दिएर र अब हामीले तपाईलाई पनि यो किताब प्रदान गरेका छौं, जसबाट मानिसहरूलाई जे प्रदान गरेका छौं

तपाईले स्पष्ट गरी वर्णन गर्नुस्, सम्भव छ तिनीहरूले विचार गरुन् ।

४५) के तिनीहरू जसले कि अत्यन्त नराम्रा षडयन्त्र गर्दछन्, यसबाट आफूलाई सुरक्षित ठान्दछन् कि अल्लाहले पृथ्वीमा उनीहरूलाई धसाई हालोस् अथवा उनी तर्फ यस्तो ठाउँबाट सजाय आई पुगोस् जसबारे उनलाई अनुमान पनि नहोस् ।

أَفَأَمِنَ الَّذِينَ مَكَرُوا السَّيِّئَاتِ أَن يَخْسِفَ اللَّهُ بِهِمُ الْأَرْضَ أَوْ يَأْتِيَهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُونَ ﴿٤٥﴾

४६) वा उनीहरूलाई हिंडडुल गर्दा समातिहालोस्, तिनीहरूले अल्लाहलाई कुनै हालतमा पनि हैरान गर्न सक्तैनन् ।

أَوْ يَأْخُذَهُمْ فِي تَقَلُّبِهِمْ فَمَا هُم بِمُعْجِزِينَ ﴿٤٦﴾

४७) वा तिनीहरूमा सजायको भय उत्पन्न गराएर समातिहालोस् । निःसन्देह तिम्रो पालनकर्ता अत्यन्त कृपालु (र) परम दयालु छ ।

أَوْ يَأْخُذَهُمْ عَلَىٰ تَخَوُّفٍ فَإِنَّ رَبَّكُمْ لَرَءُوفٌ رَّحِيمٌ ﴿٤٧﴾

४८) के तिनीहरूले अल्लाहका प्राणीहरूमध्ये कसैलाई पनि देखेनन्, जसका छाँयाहरू दाँयाबाट र बाँयाबाट झुकेर अल्लाहको अगाडि ढोग्छन् र आफ्नो व्याकुलता प्रदर्शन गर्दछन् ।

أَوَلَمْ يَرَوْا إِلَىٰ مَا خَلَقَ اللَّهُ مِن شَيْءٍ يَتَفَيَّأُ ظِلَالُهُ عَنِ الْيَمِينِ وَالشَّمَائِلِ سُجَّدًا لِّلَّهِ وَهُمْ دَاخِرُونَ ﴿٤٨﴾

४९) निश्चित रूपले सबै प्राणीहरू जो आकाशहरू र पृथ्वीमा छन्, अल्लाहको अगाडि ढोग्छन् र फरिश्ताहरू पनि र यिनीहरू अलिकति पनि घमण्ड गर्दैनन् ।

وَلِلَّهِ يَسْجُدُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ مِن دَابَّةٍ وَالْمَلَائِكَةُ وَهُمْ لَا يَسْتَكْبِرُونَ ﴿٤٩﴾

يَخَافُونَ رَبَّهُم مِّن فَوْقِهِمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ۩ ٥٠

५०) र आफ्नो पालनकर्ताबाट जो तिनीहरू भन्दा माथि छ, तर्सन्छन् र जुन कुरोको तिनीहरूलाई आदेश हुन्छ त्यसको पालना गर्दछन् ।

وَقَالَ اللَّهُ لَا تَتَّخِذُوا إِلَٰهَيْنِ اثْنَيْنِ ۖ إِنَّمَا هُوَ إِلَٰهٌ وَاحِدٌ ۖ فَإِيَّايَ فَارْهَبُونِ ٥١

५१) अल्लाहको आदेश भइसकेको छ कि दुईवटा पूज्य नबनाऊ-पूजनीय उहि एउटा मात्र छ, तसर्थ मसित मात्र तिमीहरू डर भय मान ।

وَلَهُ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَلَهُ الدِّينُ وَاصِبًا ۚ أَفَغَيْرَ اللَّهِ تَتَّقُونَ ٥٢

५२) जेजति आकाशहरूमा र जेजति पृथ्वीमा छन्, सबै उसैको हो, र उसैको इबादत (उपासना) आवश्यक छ, अनि के तिमी अल्लाह बाहेक अरुहरूसित तर्सन्छौ ?

وَمَا بِكُم مِّن نِّعْمَةٍ فَمِنَ اللَّهِ ۖ ثُمَّ إِذَا مَسَّكُمُ الضُّرُّ فَإِلَيْهِ تَجْأَرُونَ ٥٣

५३) असल कुराहरू जे जति तिमीले पाएका छौ सबै अल्लाहबाटै प्रदान गरिएका हुन् । अहिले पनि जब तिमीलाई कुनै कष्ट पुग्दछ तब उसैको अगाडि प्रार्थना गर्दछौ ।

ثُمَّ إِذَا كَشَفَ الضُّرَّ عَنكُمْ إِذَا فَرِيقٌ مِّنكُم بِرَبِّهِمْ يُشْرِكُونَ ٥٤

५४) अनि जब उसले तिमीलाई कष्टबाट मुक्त गरिदिन्छ त तिमीहरू मध्ये केहीले अल्लाहको साझेदार ठहराउन थाल्छन् ।

لِيَكْفُرُوا بِمَا آتَيْنَاهُمْ ۚ فَتَمَتَّعُوا ۖ فَسَوْفَ تَعْلَمُونَ ٥٥

५५) कि जुन राम्रा कुराहरू हामीले उनलाई प्रदान गरेका छौं त्यसप्रति कृतघ्नता प्रकट गरुन्, हो केहि सांसारिक फाइदाहरू लिइहाल, तर याद राख छिट्टै तिमीलाई थाहा भइहाल्नेछ ।

وَيَجْعَلُونَ لِمَا لَا يَعْلَمُونَ نَصِيبًا مِّمَّا رَزَقْنَٰهُمْ ۗ تَٱللَّهِ لَتُسْـَٔلُنَّ عَمَّا كُنتُمْ تَفْتَرُونَ ﴿٥٦﴾

५६) र हामीद्वारा प्रदान गरिएका कुराहरू मध्ये यस्ताको भाग निर्धारित गर्छन् जसबारे केही थाहा छैन । अल्लाहको सौगन्ध छ ! जुन असत्य कुराहरूको रचना गर्दछौं त्यसबारे तिमीसित अवश्य नै सोधपूछ हुनेछ ।

وَيَجْعَلُونَ لِلَّهِ ٱلْبَنَٰتِ سُبْحَٰنَهُۥ ۙ وَلَهُم مَّا يَشْتَهُونَ ﴿٥٧﴾

५७) ऊ यस कुराबाट मुक्त र महान छ जो उनीहरूले अल्लाहको लागि केटीहरू निर्धारित गर्दछन् र आफ्नो निम्ति (छोराहरू) जुनकि तिनीहरूलाई राम्रो लाग्छ, आफ्नो भाग लगाउँछन् ।

وَإِذَا بُشِّرَ أَحَدُهُم بِٱلْأُنثَىٰ ظَلَّ وَجْهُهُۥ مُسْوَدًّا وَهُوَ كَظِيمٌ ﴿٥٨﴾

५८) जब तिनीहरू मध्ये कसैलाई छोरी (जन्मेको) समाचार प्राप्त हुन्छ, त उसको अनुहार (दु:खले) कालो भइहाल्छ र उसको हृदय दु:खी भइहाल्छ ।

يَتَوَٰرَىٰ مِنَ ٱلْقَوْمِ مِن سُوٓءِ مَا بُشِّرَ بِهِۦٓ ۚ أَيُمْسِكُهُۥ عَلَىٰ هُونٍ أَمْ يَدُسُّهُۥ فِى ٱلتُّرَابِ ۗ أَلَا سَآءَ مَا يَحْكُمُونَ ﴿٥٩﴾

५९) र यस नराम्रो समाचारबाट अन्य मानिसहरूबाट लुक्दै हिंड्छ र सोच्दछ कि अपमान सहेर यसलाई जीवित रहन देओस् वा जमीन मुनि गाडिदेओस् । हेर, यिनीहरूले कस्तो नराम्रो निर्णय गर्दछन् ।

لِلَّذِينَ لَا يُؤْمِنُونَ بِٱلْءَاخِرَةِ مَثَلُ ٱلسَّوْءِ ۖ وَلِلَّهِ ٱلْمَثَلُ ٱلْأَعْلَىٰ ۚ وَهُوَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿٦٠﴾

६०) जसले आखिरतमाथि आस्था राख्दैनन् तिनै नराम्रा उदाहरण हुन्, अल्लाहको लागि त उच्च विशेषता छ ऊ सर्वशक्तिमान, र बुद्धिमत्ता सम्पन्न छ ।

وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِظُلْمِهِم مَّا تَرَكَ عَلَيْهَا مِن دَابَّةٍ وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ لَا يَسْتَأْخِرُونَ سَاعَةً ۖ وَلَا يَسْتَقْدِمُونَ ﴿٦١﴾

६१) यदि मान्छेहरूका पापको कारण अल्लाह तआला उनीलाई समात्थ्यो भने त पृथ्वीमा एउटा पनि सजीव प्राणी रहदैन्थ्यो । तर उसले त एक निश्चित समयसम्म छूट दिने गरेको छ जब त्यो समय आइपुग्छ त तिनी एकछिन अघि पछि हुन सक्दैनन् ।

وَيَجْعَلُونَ لِلَّهِ مَا يَكْرَهُونَ وَتَصِفُ أَلْسِنَتُهُمُ الْكَذِبَ أَنَّ لَهُمُ الْحُسْنَىٰ ۖ لَا جَرَمَ أَنَّ لَهُمُ النَّارَ وَأَنَّهُم مُّفْرَطُونَ ﴿٦٢﴾

६२) र यिनीहरूले अल्लाहको निम्ति यस्ता कुरा साबित गर्छन, जुन तिनीहरूलाई राम्रो लाग्दैन, र उनले जिब्रोले झूठो बोल्दै जान्छ कि उनलाई भलाई हुनेछ । सन्देह छैन कि तिनीहरूको निम्ति आगो (तैयार) छ र यिनीहरू नर्कमा सबभन्दा अगाडि पठाइनेछन् ।

تَاللَّهِ لَقَدْ أَرْسَلْنَا إِلَىٰ أُمَمٍ مِّن قَبْلِكَ فَزَيَّنَ لَهُمُ الشَّيْطَانُ أَعْمَالَهُمْ فَهُوَ وَلِيُّهُمُ الْيَوْمَ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٦٣﴾

६३) अल्लाहको सौगन्ध छ ! हामीले तिमीभन्दा अगाडिका समुदायहरूतिर पनि आफ्ना पैगम्बरहरू पठायौं । तर शैतानले तिनीहरूका (नराम्रा) क्रियाकलाप सिंगारेर देखायो, तसर्थ आज पनि त्यही तिनीहरूको मित्र छ र तिनीहरूको निम्ति कष्टदायक सजाय छ ।

وَمَا أَنزَلْنَا عَلَيْكَ الْكِتَابَ إِلَّا لِتُبَيِّنَ لَهُمُ الَّذِي اخْتَلَفُوا فِيهِ ۙ وَهُدًى وَرَحْمَةً لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٦٤﴾

६४) र हामीले तपाईमाथि यो किताब यसकारण उतारेका छौं कि जुन कुराहरूमा यिनीहरूको विवाद छ ती सबैलाई तपाईले स्पष्ट गरि दिनुस् र यो मोमिनहरूका लागि मार्गदर्शन र वरदान हो ।

وَاللّٰهُ اَنْزَلَ مِنَ السَّمَآءِ مَآءً فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّسْمَعُوْنَ ﴿٦٥﴾

६५) र अल्लाहले आकाशहरूबाट पानी बर्षाएर धर्तीलाई त्यसको मृत्यु पश्चात जीवित गर्दछ । निःसन्देह यसमा सुन्नेहरूको लागि निशानी छ ।

وَاِنَّ لَكُمْ فِي الْاَنْعَامِ لَعِبْرَةً ؕ نُسْقِيْكُمْ مِّمَّا فِيْ بُطُوْنِهٖ مِنْ بَيْنِ فَرْثٍ وَّدَمٍ لَّبَنًا خَالِصًا سَآئِغًا لِّلشّٰرِبِيْنَ ﴿٦٦﴾

६६) तिम्रो निम्ति चौपायाहरूमा पनि ठूलो शिक्षा छ, किनकि तिनीहरूका पेटमा जुन गोबर र रगत छ, त्यसबाट हामीले तिमीलाई विशुद्ध दूध खुवाउँछौं, जुन पिउनेहरूको निम्ति सुपाच्य र रुचिकर छ ।

وَمِنْ ثَمَرٰتِ النَّخِيْلِ وَالْاَعْنَابِ تَتَّخِذُوْنَ مِنْهُ سَكَرًا وَّرِزْقًا حَسَنًا ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿٦٧﴾

६७) र खजूर र अंगूरका फलहरूबाट पनि तिनीहरूबाट कडा पेय पदार्थ बनाउँदछौं र राम्रो जीविका पनि जसले बुभ्दछन्, तिनीहरूका निम्ति यी कुराहरूमा धेरै ठूलो निशानी छ ।

وَاَوْحٰى رَبُّكَ اِلَى النَّحْلِ اَنِ اتَّخِذِيْ مِنَ الْجِبَالِ بُيُوْتًا وَّمِنَ الشَّجَرِ وَمِمَّا يَعْرِشُوْنَ ﴿٦٨﴾

६८) तपाईको पालनकर्ताले माहुरीलाई आदेश गर्‍यो कि पहाड़हरूमा रुखहरूमा र मानिसले बनाएका अग्ला-अग्ला निवास स्थानहरूमा चाका बनाऊ ।

ثُمَّ كُلِيْ مِنْ كُلِّ الثَّمَرٰتِ فَاسْلُكِيْ سُبُلَ رَبِّكِ ذُلُلًا ؕ يَخْرُجُ مِنْ بُطُوْنِهَا شَرَابٌ مُّخْتَلِفٌ اَلْوَانُهٗ فِيْهِ شِفَآءٌ لِّلنَّاسِ ؕ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٦٩﴾

६९) र हरेक किसिमको फलफूल खाऊ र आफ्नो पालनकर्ताको सरलमार्गमा हिड्ने गर । उनको पेटबाट रंग बिरंगी पिउने कुरा निस्कन्छ जसका विभिन्न रङ्गहरू हुन्छन् र त्यसमा मानिसहरूको कैयौं उपचार छ । निःसन्देह चिन्तन गर्नेहरूको निम्ति उसमा पनि ठूलो निशानी छ ।

७०) अल्लाहले नै तिम्रो सृष्टि गरेको छ, अनि उसैले तिमीलाई मृत्यु दिनेछ, र तिमीहरूमध्ये केहि यस्ता छन् कि निकै कमजोर बृद्ध अवस्थामा पुग्छन् र (धेरै कुराहरू) को ज्ञान हासिल गरेपछि पनि अनभिज्ञ भइहाल्छन् । निःसन्देह अल्लाह ज्ञाता र शक्तिसम्पन्न छ ।

وَاللّٰهُ خَلَقَكُمْ ثُمَّ يَتَوَفّٰىكُمْ وَمِنْكُمْ مَّنْ يُّرَدُّ اِلٰٓى اَرْذَلِ الْعُمُرِ لِكَيْ لَا يَعْلَمَ بَعْدَ عِلْمٍ شَيْـًٔا ۗ اِنَّ اللّٰهَ عَلِيْمٌ قَدِيْرٌ ﴿٧٠﴾

७१) अल्लाहले नै जीविकामा केहिलाई केहि माथि प्रधानता प्रदान गरेको छ, त जुन मानिसहरूलाई प्रधानता प्राप्त छ, तिनीहरूले आफ्नो जीविका आफ्नो अधीनका मानिसहरूलाई दिँदैनन् कि सबै समान भइहालुन्, तसर्थ के यिनीहरू अल्लाहबाट प्रदान गरिएका उपहारहरूबाट इन्कार गर्नेछन् ?

وَاللّٰهُ فَضَّلَ بَعْضَكُمْ عَلٰى بَعْضٍ فِى الرِّزْقِ ۚ فَمَا الَّذِيْنَ فُضِّلُوْا بِرَآدِّيْ رِزْقِهِمْ عَلٰى مَا مَلَكَتْ اَيْمَانُهُمْ فَهُمْ فِيْهِ سَوَآءٌ ۗ اَفَبِنِعْمَةِ اللّٰهِ يَجْحَدُوْنَ ﴿٧١﴾

७२) अल्लाहले नै तिमीमध्येबाट तिम्रो निम्ति जोड़ीहरूको सृष्टि गऱ्यो र स्वास्नीबाट तिम्रा छोराहरू र नातीहरूको सृष्टि गऱ्यो र खानाको निम्ति तिमीलाई राम्रा राम्रा खानेकुरा दियो, त के यिनीहरूले तैपनि झूठ कुराहरूमा विश्वास राख्दछन् र अल्लाहबाट दिएका उपहारहरू प्रति कृतघ्नता प्रकट गर्नेछन् ?

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّنْ اَنْفُسِكُمْ اَزْوَاجًا وَّجَعَلَ لَكُمْ مِّنْ اَزْوَاجِكُمْ بَنِيْنَ وَحَفَدَةً وَّرَزَقَكُمْ مِّنَ الطَّيِّبٰتِ ۗ اَفَبِالْبَاطِلِ يُؤْمِنُوْنَ وَبِنِعْمَتِ اللّٰهِ هُمْ يَكْفُرُوْنَ ﴿٧٢﴾

७३) र तिनीहरूले अल्लाह बाहेक यस्ता कुराहरूको पूजा गर्दछन् जसले कि तिनीहरूलाई आकाशहरू र धर्तीमा

وَيَعْبُدُوْنَ مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَمْلِكُ لَهُمْ رِزْقًا مِّنَ السَّمٰوٰتِ وَالْاَرْضِ شَيْـًٔا وَّلَا يَسْتَطِيْعُوْنَ ﴿٧٣﴾

जीविका प्रदान गर्न अलिकति पनि अधिकार राख्दैनन् र न क्षमता राख्दछन् ।

فَلَا تَضْرِبُوا لِلّٰهِ الْاَمْثَالَ ؕ اِنَّ اللّٰهَ يَعْلَمُ وَاَنْتُمْ لَا تَعْلَمُوْنَ ﴿٧٤﴾

७४) तसर्थ अल्लाहको बारेमा (गलत) उदाहरणहरू नबनाऊ । अल्लाहलाई मात्र थाहा छ र तिमीहरू जान्दैनौ ।

ضَرَبَ اللّٰهُ مَثَلًا عَبْدًا مَّمْلُوْكًا لَّا يَقْدِرُ عَلٰى شَيْءٍ وَّمَنْ رَّزَقْنٰهُ مِنَّا رِزْقًا حَسَنًا فَهُوَ يُنْفِقُ مِنْهُ سِرًّا وَّجَهْرًا ؕ هَلْ يَسْتَوٗنَ ؕ اَلْحَمْدُ لِلّٰهِ ؕ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿٧٥﴾

७५) अल्लाहले एउटा अर्को उदाहरण वर्णन गर्दछ कि एउटा दास छ, जो अर्काको अधीनमा छ र उसलाई कुनै कुरामाथि अधिकार प्राप्त छैन र एउटा यस्तो मानिस छ, जसलाई हामीले आफूकहाँबाट उचित धन-सम्पत्ति प्रदान गरेका छौं, र उसले त्यसबाट लुकिछिपि र खुल्ला रूपमा खर्च गर्दछ । त के दुवैजना एक समान छन् ? (कदापि होइन) सम्पूर्ण प्रशंसाहरू अल्लाहका लागि नै छन् तर यिनीहरूमध्ये अधिकतरले बुझ्दैनन् ।

وَضَرَبَ اللّٰهُ مَثَلًا رَّجُلَيْنِ اَحَدُهُمَآ اَبْكَمُ لَا يَقْدِرُ عَلٰى شَيْءٍ وَّهُوَ كَلٌّ عَلٰى مَوْلٰىهُ ۙ اَيْنَمَا يُوَجِّهْهُّ لَا يَاْتِ بِخَيْرٍ ؕ هَلْ يَسْتَوِيْ هُوَ ۙ وَمَنْ يَّاْمُرُ بِالْعَدْلِ ۙ وَهُوَ عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٧٦﴾

७६) अल्लाहले एउटा अर्को उदाहरण पनि वर्णन गर्दछ, दुईजना मानिसहरूको । त्यसमध्ये एउटा लाटो छ कुनै कुरामाथि उसलाई अधिकार प्राप्त छैन अपितु ऊ आफ्नो मालिक माथि एउटा अनावश्यक बोझ (भारी) छ । त्यसलाई जहाँ पठाए पनि उसले कुनै भलो कुरो ल्याउँदैन, के यस्तो (लाटो बहिरो) र त्यो मान्छे जो (सुन्दछ, बोल्दछ र)

मानिसहरूलाई इन्साफ गर्न आदेश दिन्छ र स्वयं सोझो बाटोमो हिंडीराखेछ, दवै समान हुन्छन् र ?

وَلِلّٰهِ غَيْبُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَمَاۤ اَمْرُ السَّاعَةِ اِلَّا كَلَمْحِ الْبَصَرِ اَوْ هُوَ اَقْرَبُ ؕ اِنَّ اللّٰهَ عَلٰى كُلِّ شَیْءٍ قَدِيْرٌ ﴿٧٧﴾

७७) आकाश र पृथ्वीको गोप्यता मात्र अल्लाहलाई नै थाहा छ कियामतको आगमन यस्तै छ जस्तो आँखाको झिम्काई, बरु त्यो भन्दा पनि छिटो, निःसन्देह हरेक कुरोमा अल्लाह शक्ति सम्पन्न सामर्थ्यवान छ ।

وَاللّٰهُ اَخْرَجَكُمْ مِّنْۢ بُطُوْنِ اُمَّهٰتِكُمْ لَا تَعْلَمُوْنَ شَيْـًٔا ۙ وَّجَعَلَ لَكُمُ السَّمْعَ وَالْاَبْصَارَ وَالْاَفْـِٕدَةَ ۙ لَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿٧٨﴾

७८) अल्लाहले नै तिमीलाई तिम्रा आमाहरूको पेटबाट निकाल्यो जबकि तिमीलाई केहि पनि थाहा थिएन । र उसैले तिमीलाई श्रवणक्षमता र हेर्ने क्षमता र हृदय (र यिनीहरू बाहेक अन्य अङ्गहरू) प्रदान गऱ्यो कि तिमीले उसप्रति कृतज्ञता प्रकट गर्न सक ।

اَلَمْ يَرَوْا اِلَى الطَّيْرِ مُسَخَّرٰتٍ فِیْ جَوِّ السَّمَآءِ ؕ مَا يُمْسِكُهُنَّ اِلَّا اللّٰهُ ؕ اِنَّ فِیْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٧٩﴾

७९) के तिनीहरूले चराहरूलाई देखेनन् जो आज्ञाकारी भएर आकाशको हावामा घेरिएर (उडिराख्दछन्) तिनीहरूलाई मात्र अल्लाहले नै थामिराखेको छ । निःसन्देह ईमान भएकाहरूको लागि यसमा ठूलो निशानीहरू छन्

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّنْۢ بُيُوْتِكُمْ سَكَنًا وَّجَعَلَ لَكُمْ مِّنْ جُلُوْدِ الْاَنْعَامِ بُيُوْتًا تَسْتَخِفُّوْنَهَا يَوْمَ ظَعْنِكُمْ وَيَوْمَ اِقَامَتِكُمْ ۙ وَمِنْ اَصْوَافِهَا وَاَوْبَارِهَا وَاَشْعَارِهَاۤ اَثَاثًا وَّمَتَاعًا اِلٰى حِيْنٍ ﴿٨٠﴾

८०) र अल्लाहले नै तिम्रो निम्ति तिम्रा घरहरूमा शान्ति स्थल बनायो र उसैले चौपायाका छालाहरूबाट तिम्रो निम्ति पाल (बासस्थान) बनायो, जसलाई तिमीले हल्का र सानो

पाउँदछौं, जब तिमी यात्रा गर्दछौ र कुनै ठाउँमा बास बस्दा काममा ल्याउँछौ र उनीहरूको ऊन र नरम कपाल र रौंहरूबाट तिमीहरूले सुविधाजनक सामानहरू तयार गर्दछौ जुनकि एउटा निर्धारित समयसम्म काम लाग्छन् ।

وَاللّٰهُ جَعَلَ لَكُمْ مِّمَّا خَلَقَ ظِلٰلًا وَّجَعَلَ لَكُمْ مِّنَ الْجِبَالِ اَكْنَانًا وَّجَعَلَ لَكُمْ سَرَابِيْلَ تَقِيْكُمُ الْحَرَّ وَسَرَابِيْلَ تَقِيْكُمْ بَاْسَكُمْ ۗ كَذٰلِكَ يُتِمُّ نِعْمَتَهٗ عَلَيْكُمْ لَعَلَّكُمْ تُسْلِمُوْنَ ﴿٨١﴾

८१) अल्लाहले नै तिम्रो लागि आफूले सृष्टि गरेका कुराहरूबाट छायाँ बनायो र उसैले पहाडहरूमा तिम्रो लागि गुफाहरू बनायो र वस्त्रहरू (पनि) जसले तिमीलाई गरमीबाट बचाउँछन् र (यस्ता) वस्त्रहरू (पनि) जसले तिमीलाई युद्धको बेला काम लाग्छन्, र रक्षा गर्दछन् । यस्तै प्रकारले अल्लाह आफ्नो कृपा तिमीमाथि पूरा गर्दछ कि तिमी आज्ञाकारी बन्न सक ।

فَاِنْ تَوَلَّوْا فَاِنَّمَا عَلَيْكَ الْبَلٰغُ الْمُبِيْنُ ﴿٨٢﴾

८२) तैपनि यदि यिनीहरू विमुख भई रहन्छन् भने (हे पैगम्बर !) तपाईको काम मात्र स्पष्ट रूपले सुनाई दिनु नै हो ।

يَعْرِفُوْنَ نِعْمَتَ اللّٰهِ ثُمَّ يُنْكِرُوْنَهَا وَاَكْثَرُهُمُ الْكٰفِرُوْنَ ﴿٨٣﴾

८३) यिनीहरू अल्लाहका अमूल्य उपहार जान्दछन्, तर (जानी जानी) तिनलाई नकार्दछन् अपितु यिनीहरू मध्ये अक्सर कृतघ्न छन् ।

وَيَوْمَ نَبْعَثُ مِنْ كُلِّ اُمَّةٍ شَهِيْدًا ثُمَّ لَا يُؤْذَنُ لِلَّذِيْنَ كَفَرُوْا وَلَا هُمْ يُسْتَعْتَبُوْنَ ﴿٨٤﴾

८४) र जुन दिन हामीले प्रत्येक समुदाय मध्येबाट साक्षी उभ्याउने छौं, त न काफिरहरूलाई (बोल्न) अनुमति

दिइनेछ र नत उनीहरूको पश्चाताप स्वीकार गरिनेछ ।

وَإِذَا رَأَى الَّذِينَ ظَلَمُوا الْعَذَابَ فَلَا يُخَفَّفُ عَنْهُمْ وَلَا هُمْ يُنْظَرُونَ ﴿٨٥﴾

८५) र जब यी अत्याचारीहरूले सजाय देख्नेछन्, फेरि नत उनीहरूको सजायमा कुनै कमी गरिने छ, र नत उनीहरूलाई मोहलत दिइनेछ ।

وَإِذَا رَأَى الَّذِينَ أَشْرَكُوا شُرَكَاءَهُمْ قَالُوا رَبَّنَا هَٰؤُلَاءِ شُرَكَاؤُنَا الَّذِينَ كُنَّا نَدْعُو مِنْ دُونِكَ ۖ فَأَلْقَوْا إِلَيْهِمُ الْقَوْلَ إِنَّكُمْ لَكَاذِبُونَ ﴿٨٦﴾

८६) र जब मुश्रिकहरूले आफूले साझेदार बनाएकाहरूलाई देख्नेछन्, त भन्नेछन्: कि हे हाम्रो पालनकर्ता ! यी तिनै साझेदार हुन् जसलाई हामीले तिमी बाहेक पुकार्ने गर्दथ्यौ, त तिनीहरूले उनीहरूसित भन्नेछन्: कि तिमी विल्कुलै झूठा हौ ।

وَأَلْقَوْا إِلَى اللَّهِ يَوْمَئِذٍ السَّلَمَ ۖ وَضَلَّ عَنْهُمْ مَا كَانُوا يَفْتَرُونَ ﴿٨٧﴾

८७) त्यस दिन यिनीहरू सबै बेबसभई अल्लाहको सामु टाउको निहुराई दिने छन् र जुन कुरा उनीहरूले झूठ रच्ने गर्दथे, सबै तिनीहरूबाट हराउनेछन् ।

الَّذِينَ كَفَرُوا وَصَدُّوا عَنْ سَبِيلِ اللَّهِ زِدْنَاهُمْ عَذَابًا فَوْقَ الْعَذَابِ بِمَا كَانُوا يُفْسِدُونَ ﴿٨٨﴾

८८) जुन मानिसहरूले कुफ्र गरे र अल्लाहको बाटोबाट रोके, हामीले उनीहरूलाई सजाय माथि सजाय दिँदै जाने छौं, उनीहरूको उद्दण्डताको कारणले यो बदला हुनेछ ।

وَيَوْمَ نَبْعَثُ فِي كُلِّ أُمَّةٍ شَهِيدًا عَلَيْهِمْ مِنْ أَنْفُسِهِمْ ۖ وَجِئْنَا بِكَ شَهِيدًا عَلَىٰ هَٰؤُلَاءِ ۚ وَنَزَّلْنَا عَلَيْكَ الْكِتَابَ تِبْيَانًا لِكُلِّ شَيْءٍ وَهُدًى وَرَحْمَةً وَبُشْرَىٰ لِلْمُسْلِمِينَ ﴿٨٩﴾

८९) र जुन दिन हामीले प्रत्येक समुदायबाट स्वयं उनीमाथि साक्षी उभ्याउने छौं, र (हे पैग़म्बर) तपाईलाई यिनीहरूमाथि साक्षी बनाएर ल्याउने छौं, र हामीले तपाई

माथि (यस्तो) किताब उतारेका छौं कि यसमा हरेक कुराको वर्णन बिस्तारपूर्वक छ । र मुसलमानहरूको लागि मार्गदर्शन र दया तथा शुभ-सन्देश छ ।

إِنَّ ٱللَّهَ يَأْمُرُ بِٱلْعَدْلِ وَٱلْإِحْسَٰنِ وَإِيتَآئِ ذِى ٱلْقُرْبَىٰ وَيَنْهَىٰ عَنِ ٱلْفَحْشَآءِ وَٱلْمُنكَرِ وَٱلْبَغْىِ ۚ يَعِظُكُمْ لَعَلَّكُمْ تَذَكَّرُونَ ﴿٩٠﴾

९०) अल्लाहले तिमीलाई न्याय र भलाई गर्न र नजिकका मानिसहरूलाई सहायता दिने आदेश गर्दछ र अमर्यादित र अनुचित कर्महरू-बाट र अन्याय र नराम्रा काम गर्नबाट मनाही गर्दछ उसले स्वयम् तिमीलाई निर्देशित गर्दछ कि तिमीले उपदेश ग्रहण गर ।

وَأَوْفُوا۟ بِعَهْدِ ٱللَّهِ إِذَا عَٰهَدتُّمْ وَلَا تَنقُضُوا۟ ٱلْأَيْمَٰنَ بَعْدَ تَوْكِيدِهَا وَقَدْ جَعَلْتُمُ ٱللَّهَ عَلَيْكُمْ كَفِيلًا ۚ إِنَّ ٱللَّهَ يَعْلَمُ مَا تَفْعَلُونَ ﴿٩١﴾

९१) र अल्लाहको वचनलाई पालन गर जब तिमी एक-आपसमा करार गर्दछौ र जब पक्का कसमहरू खान्छौ त तिनलाई नतोड किनभने तिमीले अल्लाहलाई आफ्नो जमानतदार निर्धारित गरिसकेका छौ । जे-जति तिमीले गर्दछौ अल्लाह त्यसलाई राम्ररी जान्दछ ।

وَلَا تَكُونُوا۟ كَٱلَّتِى نَقَضَتْ غَزْلَهَا مِنۢ بَعْدِ قُوَّةٍ أَنكَٰثًا تَتَّخِذُونَ أَيْمَٰنَكُمْ دَخَلًۢا بَيْنَكُمْ أَن تَكُونَ أُمَّةٌ هِىَ أَرْبَىٰ مِنْ أُمَّةٍ ۚ إِنَّمَا يَبْلُوكُمُ ٱللَّهُ بِهِۦ ۚ وَلَيُبَيِّنَنَّ لَكُمْ يَوْمَ ٱلْقِيَٰمَةِ مَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٩٢﴾

९२) र त्यस आईमाई जस्तो नहुनु जसले परिश्रमले त धागो कात्यो, फेरि त्यसलाई चुँडालेर टुक्रा-टुक्रा गरिहाल्यो । तिमीले आफ्ना शपथहरूलाई आपसमा यस कुराको माध्यम बनाउन नथाल, कि एक समूह अर्को समूहभन्दा बढि शक्तिशाली हुन पुगोस् । कुरो मात्र

यही छ कि अल्लाहले यस वाचाबाट तिम्रो परीक्षा लिई रहेको छ र जुन कुराहरूमा तिमीले विवाद गर्दछौ, कियामतका दिन अल्लाहले तिनीहरूको वास्तविकता तिमीहरूमाथि प्रकट गर्नेछ ।

९३) यदि अल्लाहले चाहेको भए, तिमी (सबै) लाई एउटै समूहमा राखिहाल्दथ्यो तर त्यसले जसलाई चाहन्छ, पथविचलित गर्दछ र जसलाई चाहन्छ मार्गदर्शन गर्दछ । जुन क्रियाकलाप तिमीले गर्दछौ तिनीहरूको बारेमा तिमीसित अवश्य नै सोधिनेछ ।

وَلَوْ شَاءَ اللَّهُ لَجَعَلَكُمْ أُمَّةً وَاحِدَةً وَلَٰكِن يُضِلُّ مَن يَشَاءُ وَيَهْدِي مَن يَشَاءُ ۚ وَلَتُسْأَلُنَّ عَمَّا كُنتُمْ تَعْمَلُونَ ﴿٩٣﴾

९४) र आफ्ना शपथहरूलाई तिमीहरूले परस्पर विश्वास घातको माध्यम नबनाऊ कि तिम्रा पाइलाहरू दृढ भएपछि पनि अस्थिर हुन थालुन् र तिमी माथि अज़ाब आई जाओस् यस कारणले कि तिमीले मानिसहरूलाई अल्लाहको बाटोबाट रोक्यौ, तिमीलाई ठूलो गम्भिर सजाय हुनेछ ।

وَلَا تَتَّخِذُوا أَيْمَانَكُمْ دَخَلًا بَيْنَكُمْ فَتَزِلَّ قَدَمٌ بَعْدَ ثُبُوتِهَا وَتَذُوقُوا السُّوءَ بِمَا صَدَدتُّمْ عَن سَبِيلِ اللَّهِ ۖ وَلَكُمْ عَذَابٌ عَظِيمٌ ﴿٩٤﴾

९५) तिमीले अल्लाहसित गरेको वाचालाई थोरै मोलमा बेच्ने नगर । याद राख अल्लाहको नजिकको वस्तु नै तिम्रो लागि अति उत्तम छ । यदि तिमीमा ज्ञान छ भने ।

وَلَا تَشْتَرُوا بِعَهْدِ اللَّهِ ثَمَنًا قَلِيلًا ۚ إِنَّمَا عِندَ اللَّهِ هُوَ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٩٥﴾

९६) जे जति तिम्रो पासमा छ, त्यो खतम

مَا عِندَكُمْ يَنفَدُ ۖ وَمَا عِندَ اللَّهِ بَاقٍ ۗ

وَلَنَجْزِيَنَّ الَّذِيْنَ صَبَرُوْٓا اَجْرَهُمْ بِاَحْسَنِ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٩٦﴾

भइहाल्छ, र जे अल्लाहलको पासमा छ, त्यो बाँकी रहन्छ र धैर्यधारण गर्ने जुन मानिसहरू छन् तिनीहरूलाई हामीले उनीहरूका कर्महरूको राम्रो पुरस्कार अवश्य दिनेछौं ।

مَنْ عَمِلَ صَالِحًا مِّنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَلَنُحْيِيَنَّهٗ حَيٰوةً طَيِّبَةً ۚ وَلَنَجْزِيَنَّهُمْ اَجْرَهُمْ بِاَحْسَنِ مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٩٧﴾

९७) जुन व्यक्तिले सत्कर्म गर्दछ, पुरुष होस् वा स्त्री, र त्यो मोमिन पनि छ, त हामीले उसलाई (संसारमा) पवित्र (र) आरामको जीवन प्रदान गर्नेछौं र (आखिरतमा) तिनीहरूको राम्रो कार्यको अत्यन्त राम्रो बदला पनि अवश्य नै दिनेछौं ।

فَاِذَا قَرَاْتَ الْقُرْاٰنَ فَاسْتَعِذْ بِاللّٰهِ مِنَ الشَّيْطٰنِ الرَّجِيْمِ ﴿٩٨﴾

९८) जब तिमी कुरआन पढ्न थाल्छौं त तिरस्कृत शैतानसित अल्लाहबाट रक्षा माँग्ने गर ।

اِنَّهٗ لَيْسَ لَهٗ سُلْطٰنٌ عَلَى الَّذِيْنَ اٰمَنُوْا وَعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٩٩﴾

९९) ईमान वालाहरू र आफ्नो पालनकर्तामाथि भरोसा राख्नेहरूमाथि त्यसको (शैतानको) केही सामर्थ लाग्दैन ।

اِنَّمَا سُلْطٰنُهٗ عَلَى الَّذِيْنَ يَتَوَلَّوْنَهٗ وَالَّذِيْنَ هُمْ بِهٖ مُشْرِكُوْنَ ﴿١٠٠﴾

१००) हो त्यसको अधिकार तिनीहरूमाथि मात्र लाग्छ, जसले उसलाई आफ्ना साथी बनाउँदछन् र उसको (प्रेरणाको) कारणले अल्लाहसँग अरुलाई साझेदार निर्धारित गर्दछन् ।

وَاِذَا بَدَّلْنَآ اٰيَةً مَّكَانَ اٰيَةٍ ۙ وَّاللّٰهُ اَعْلَمُ بِمَا يُنَزِّلُ قَالُوْٓا اِنَّمَآ اَنْتَ مُفْتَرٍ ۭ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿١٠١﴾

१०१) र जब हामीले कुनै आयतलाई कुनै अन्य आयतको ठाउँमा राख्छौं र अल्लाहले जे जति उतार्ने गर्दछ त्यसलाई उसले राम्ररी जान्दछ,

अनि यिनीहरू भन्दछन्: कि तिमीले त (त्यसै) आफ्नो तर्फबाट रचेर ल्याउँछौ । कुरो यो छ कि तिनीहरूमध्ये अधिकांश अनभिज्ञ छन् ।

قُلْ نَزَّلَهُ رُوحُ الْقُدُسِ مِن رَّبِّكَ بِالْحَقِّ لِيُثَبِّتَ الَّذِينَ آمَنُوا وَهُدًى وَبُشْرَىٰ لِلْمُسْلِمِينَ ﴿١٠٢﴾

१०२) भनिदिनुस्: कि यसलाई रूहुल कुद्दुस् फरिश्ता (जिब्राइल) तिम्रो पालनकर्ताको तर्फबाट सत्यताका साथ लिएर आएका छन्, ताकि यसबाट अल्लाहले आज्ञापालन गर्नेहरूको ईमानलाई सुदृढ गरोस्, र (यसबाट) मुसलमानहरूको मार्गदर्शन र कल्याण भई जाओस् ।

وَلَقَدْ نَعْلَمُ أَنَّهُمْ يَقُولُونَ إِنَّمَا يُعَلِّمُهُ بَشَرٌ ۗ لِّسَانُ الَّذِي يُلْحِدُونَ إِلَيْهِ أَعْجَمِيٌّ وَهَٰذَا لِسَانٌ عَرَبِيٌّ مُّبِينٌ ﴿١٠٣﴾

१०३) हामीलाई राम्ररी थाहा छ कि यिनीहरूले भन्दछन्: कि यस (पैगम्बर) लाई एउटा व्यक्तिले सिकाएर जान्छ तर जसको तर्फ यिनीहरूले दुष्टतापूर्वक संकेत गर्दछन् त्यसको भाषा त अजमी हो र यो कुरआन स्पष्ट अरबी भाषामा छ ।

إِنَّ الَّذِينَ لَا يُؤْمِنُونَ بِآيَاتِ اللَّهِ لَا يَهْدِيهِمُ اللَّهُ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١٠٤﴾

१०४) जुन, मानिसहरूले अल्लाहका आयतहरूमाथि आस्था राख्दैनन्, तिनीहरूलाई अल्लाहले मार्गदर्शन गर्दैन, र तिनीहरूको निम्ति कष्टदायक सजाय छ ।

إِنَّمَا يَفْتَرِي الْكَذِبَ الَّذِينَ لَا يُؤْمِنُونَ بِآيَاتِ اللَّهِ ۖ وَأُولَٰئِكَ هُمُ الْكَاذِبُونَ ﴿١٠٥﴾

१०५) झूठ आक्षेप त तिनै मानिसहरूले लगाउने गर्दछन जसलाई अल्लाहका आयतहरूमाथि आस्था हुँदैन र तिनै झूठा हुन् ।

१०६) जुन मानिसले ईमान ल्याएपछि अल्लाहसँग कुफ्र गर्दछ, मात्र त्यो बाहेक जसलाई बाध्य गरिन्छ, र उसको हृदय ईमानकासाथ दृढ हुन्छ, परन्तु त्यो जसले हृदय खोलेर कुफ्र गर्दछ, त यस्ता माथि अल्लाहको क्रोध छ, र तिनीहरूलाई अत्यन्त कडा सजाय हुनेछ ।

مَنْ كَفَرَ بِاللّٰهِ مِنْۢ بَعْدِ اِيْمَانِهٖٓ اِلَّا مَنْ اُكْرِهَ وَقَلْبُهٗ مُطْمَىِٕنٌّۢ بِالْاِيْمَانِ وَلٰكِنْ مَّنْ شَرَحَ بِالْكُفْرِ صَدْرًا فَعَلَيْهِمْ غَضَبٌ مِّنَ اللّٰهِ ۚ وَلَهُمْ عَذَابٌ عَظِيْمٌ ۝١٠٦

१०७) यो यस कारणले कि उनीहरूले सांसारिक जीवनलाई आखिरतको दाँजोमा प्रिय ठाने निःसन्देह अल्लाहले काफिरहरूलाई मार्गदर्शन गर्दैन ।

ذٰلِكَ بِاَنَّهُمُ اسْتَحَبُّوا الْحَيٰوةَ الدُّنْيَا عَلَى الْاٰخِرَةِ ۙ وَاَنَّ اللّٰهَ لَا يَهْدِى الْقَوْمَ الْكٰفِرِيْنَ ۝١٠٧

१०८) यिनै मानिसहरू हुन्, जसका हृदयहरूमा र कानहरूमा र आखाँहरूमा अल्लाहले छाप लगाई दिएको छ, र यिनै लापर्वाहिमा परिरहेका छन् ।

اُولٰٓىِٕكَ الَّذِيْنَ طَبَعَ اللّٰهُ عَلٰى قُلُوْبِهِمْ وَسَمْعِهِمْ وَاَبْصَارِهِمْ ۚ وَاُولٰٓىِٕكَ هُمُ الْغٰفِلُوْنَ ۝١٠٨

१०९) यसमा कुनै सन्देह छैन, कि यिनीहरूले परलोकमा ठूलो हानि बेहोर्ने छन् ।

لَا جَرَمَ اَنَّهُمْ فِى الْاٰخِرَةِ هُمُ الْخٰسِرُوْنَ ۝١٠٩

११०) अनि जुन मानिसहरूले कष्टहरू भोगेर आफ्नो वतन छाडे, अनि जिहाद गरे र स्थिर रहे, तिम्रो पालनकर्ता तिनीहरूलाई निःसन्देह यी (परीक्षाहरू) पश्चात क्षमादिने र दया गर्नेवाला छ ।

ثُمَّ اِنَّ رَبَّكَ لِلَّذِيْنَ هَاجَرُوْا مِنْۢ بَعْدِ مَا فُتِنُوْا ثُمَّ جٰهَدُوْا وَصَبَرُوْٓا ۙ اِنَّ رَبَّكَ مِنْۢ بَعْدِهَا لَغَفُوْرٌ رَّحِيْمٌ ۝١١٠

१११) जुन दिन हरेक प्राणी आफ्नो स्वार्थको लागि लडाई झगडा गर्दै

يَوْمَ تَاْتِيْ كُلُّ نَفْسٍ تُجَادِلُ عَنْ نَّفْسِهَا وَتُوَفّٰى كُلُّ نَفْسٍ مَّا عَمِلَتْ وَهُمْ لَا يُظْلَمُوْنَ ۝١١١

आउँछ र प्रत्येक व्यक्तिलाई उसको क्रियाकलापको पूरा-पूरा प्रतिफल दिइनेछ, र कसैमाथि बिल्कुल अन्याय हुने छैन ।

وَضَرَبَ اللّٰهُ مَثَلًا قَرْيَةً كَانَتْ اٰمِنَةً مُّطْمَئِنَّةً يَّاْتِيْهَا رِزْقُهَا رَغَدًا مِّنْ كُلِّ مَكَانٍ فَكَفَرَتْ بِاَنْعُمِ اللّٰهِ فَاَذَاقَهَا اللّٰهُ لِبَاسَ الْجُوْعِ وَالْخَوْفِ بِمَا كَانُوْا يَصْنَعُوْنَ ﴿١١٢﴾

११२) अल्लाहले एउटा बस्तीको उदाहरण वर्णन गर्दछ जुन पूर्ण शान्ति र सुरक्षामा थियो, प्रत्येक दिशाबाट उसको जीविकाको परिपूर्ति हुन्थ्यो फेरि अल्लाहको वरदानहरू प्रति उसले कृतध्नता प्रकट गर्‍यो, अनि अल्लाहले तिनीहरूको क्रियाकलापको कारणले बदलामा तिनीहरूलाई भूख र डरको स्वाद चखाइहाल्यो ।

وَلَقَدْ جَآءَهُمْ رَسُوْلٌ مِّنْهُمْ فَكَذَّبُوْهُ فَاَخَذَهُمُ الْعَذَابُ وَهُمْ ظٰلِمُوْنَ ﴿١١٣﴾

११३) उनीहरूको पासमा उनीहरूमध्ये एउटा पैगम्बर आयो तैपनि तिनीहरूले उसलाई झूठा भने, तसर्थ उनीहरूलाई सजाय आई समात्यो र तिनीहरू अत्याचारी नै थिए ।

فَكُلُوْا مِمَّا رَزَقَكُمُ اللّٰهُ حَلٰلًا طَيِّبًا وَّاشْكُرُوْا نِعْمَتَ اللّٰهِ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ ﴿١١٤﴾

११४) अल्लाहले तिमीहरूलाई जुन पवित्र जीविका प्रदान गरेको छ, त्यसलाई खाऊ र अल्लाहबाट प्रदान गरिएका पुरस्कारहरू प्रति आभार प्रकट गर, यदि तिमी उसैको उपासना गर्दछौ भने ।

اِنَّمَا حَرَّمَ عَلَيْكُمُ الْمَيْتَةَ وَالدَّمَ وَلَحْمَ الْخِنْزِيْرِ وَمَآ اُهِلَّ لِغَيْرِ اللّٰهِ بِهٖ ۚ فَمَنِ اضْطُرَّ غَيْرَ بَاغٍ وَّلَا عَادٍ فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿١١٥﴾

११५) उसले तिम्रो लागि मुर्दा जनावर र रगत र सुंगुरको मासु हराम (वर्जित) गरेको छ र जुन कुरामा अल्लाह बाहेक कुनै अन्यको नाम पुकारिन्छ तर हो (त्यस अवस्था

बाहेक) यदि कोही बाध्य हुन्छ तर यस शर्तमा मात्र कि ऊ स्वयम् त्यसको इच्छुक नहोस् र सीमाभन्दा अगाडि जान नखोजोस्, त निःसन्देह अल्लाह क्षमादाता र दयावान छ ।

وَلَا تَقُولُوا لِمَا تَصِفُ أَلْسِنَتُكُمُ الْكَذِبَ هَٰذَا حَلَالٌ وَهَٰذَا حَرَامٌ لِّتَفْتَرُوا عَلَى اللَّهِ الْكَذِبَ ۚ إِنَّ الَّذِينَ يَفْتَرُونَ عَلَى اللَّهِ الْكَذِبَ لَا يُفْلِحُونَ ﴿١١٦﴾

११६) आफ्नो मुखबाट कुनै झूठ कुरा नगर कि यो (हलाल) पवित्र छ र यो त्याज्य छ ताकि अल्लाहमाथि झूठा कुराको सम्बन्ध जोड्नथाल, सम्झी राख जुन मानिसहरू अल्लाह माथि झूठा कुराको सम्बन्ध गाँस्दछन्, उनीहरू सफल हुने छैनन् ।

مَتَاعٌ قَلِيلٌ وَلَهُمْ عَذَابٌ أَلِيمٌ ﴿١١٧﴾

११७) तिमीलाई फाईदा त अलिकति मात्र प्राप्त हुन्छ, तर तिनीहरूलाई नै कष्ट दायक सजाय (धेरै) हुनेछ ।

وَعَلَى الَّذِينَ هَادُوا حَرَّمْنَا مَا قَصَصْنَا عَلَيْكَ مِن قَبْلُ ۖ وَمَا ظَلَمْنَاهُمْ وَلَٰكِن كَانُوا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿١١٨﴾

११८) र जुन कुराहरू हामीले यहूदिहरूमाथि हराम गरिदिएका थियौं त्यसलाई पहिले नै तपाईलाई सुनाई सकेका छौं । र हामीले उनीहरूमाथि कुनै अत्याचार गरेनौं, बरु तिनीहरूले नै आफूमाथि अन्याय गर्ने गर्दथे ।

ثُمَّ إِنَّ رَبَّكَ لِلَّذِينَ عَمِلُوا السُّوءَ بِجَهَالَةٍ ثُمَّ تَابُوا مِن بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا إِنَّ رَبَّكَ مِن بَعْدِهَا لَغَفُورٌ رَّحِيمٌ ﴿١١٩﴾

११९) जुन मानिसहरूले अज्ञानतावश नराम्रा काम गरे, अनि प्रायश्चित गर्दछन् र सुध्रन्छन् भने तपाईको पालनकर्ताले उनीहरूलाई क्षमा र कृपा गर्नेवाला छ ।

إِنَّ إِبْرَاهِيمَ كَانَ أُمَّةً قَانِتًا لِّلَّهِ حَنِيفًا وَلَمْ يَكُ مِنَ الْمُشْرِكِينَ ﴿١٢٠﴾

१२०) निःसन्देह इब्राहीम नेतृत्वकर्ता र आदर्श पुरुष अल्लाह प्रति आज्ञाकारी र एकतर्फी निःस्वार्थी थिए, उनी

अल्लाहका साथ अरुलाई साझेदार ठहराउने मध्येबाट थिएनन् ।

شَاكِرًا لِّأَنْعُمِهِ ۚ اجْتَبَاهُ وَهَدَاهُ إِلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿١٢١﴾

१२१) अल्लाहले प्रदान गरेका नेअ्मतहरू (पुरस्कार) प्रति आभारी थिए । अल्लाहले उनलाई रोजेको थियो र सोझो बाटोमा हिँडाएको थियो ।

وَآتَيْنَاهُ فِي الدُّنْيَا حَسَنَةً ۖ وَإِنَّهُ فِي الْآخِرَةِ لَمِنَ الصَّالِحِينَ ﴿١٢٢﴾

१२२) हामीले उनलाई संसारमा पनि असल कुरा प्रदान गऱ्यौं, र उनी परलोकमा पनि सत्यनिष्ठहरूमा हुनेछन् ।

ثُمَّ أَوْحَيْنَا إِلَيْكَ أَنِ اتَّبِعْ مِلَّةَ إِبْرَاهِيمَ حَنِيفًا ۖ وَمَا كَانَ مِنَ الْمُشْرِكِينَ ﴿١٢٣﴾

१२३) फेरि हामीले तपाईतिर सन्देश (वह्य) पठायौं, ताकि तपाईले इब्राहीमको धर्मको अनुशरण गर्नुस्, जुन मुश्रिकहरूमध्ये थिएनन् ।

إِنَّمَا جُعِلَ السَّبْتُ عَلَى الَّذِينَ اخْتَلَفُوا فِيهِ ۚ وَإِنَّ رَبَّكَ لَيَحْكُمُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿١٢٤﴾

१२४) हप्ताको (शनिवारको) दिनको महानता तिनीहरूको लागि मात्र अनिवार्य गरिएको थियो, जसले त्यसमा विवाद उठाएका थिए । कुरो यो छ कि तपाईको पालनकर्ताले नै कियामतको दिन ती विवादहरूको निरोपण गर्नेछ ।

ادْعُ إِلَىٰ سَبِيلِ رَبِّكَ بِالْحِكْمَةِ وَالْمَوْعِظَةِ الْحَسَنَةِ ۖ وَجَادِلْهُم بِالَّتِي هِيَ أَحْسَنُ ۚ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِمَن ضَلَّ عَن سَبِيلِهِ ۖ وَهُوَ أَعْلَمُ بِالْمُهْتَدِينَ ﴿١٢٥﴾

१२५) (हे पैगम्बर !) मानिसहरूलाई बुद्धिमत्ता र असल उपदेशले आफ्नो पालनकर्ताको बाटोतिर बोलाउनुस् र सधै राम्रो तरिकाले तिनीहरूसित कुरा गर्नुस्, जो उसका बाटोबाट विचलित छन् तपाईको पालनकर्ताले तिनलाई पनि राम्ररी जान्दछ र जो सही मार्गमा हिड्नेहरू छन् उनीहरूलाई पनि राम्ररी जान्दछ ।

१२६) र यदि बदला लिन्छौ भने, त्यति मात्र, जति कष्ट तिमीलाई उनीहरूबाट पुगेको छ, र यदि धैर्य गर्छौ भने, त त्यो धैर्य गर्नेहरूको लागि धेरै राम्रो हो ।

وَإِنْ عَاقَبْتُمْ فَعَاقِبُوا بِمِثْلِ مَا عُوقِبْتُم بِهِ ۖ وَلَئِن صَبَرْتُمْ لَهُوَ خَيْرٌ لِّلصَّابِرِينَ ﴿١٢٦﴾

१२७) तपाईले धैर्य नै गर्ने भए पनि अल्लाहको मद्दत बिना धैर्य गर्न सक्दैनौ, र उनीहरूको बारेमा दुःखी नहुनु र जुन नराम्रो चाल यिनीहरू चालिराखेछन् त्यसबाट हृदय सानो नगर्नु ।

وَاصْبِرْ وَمَا صَبْرُكَ إِلَّا بِاللَّهِ ۚ وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُ فِي ضَيْقٍ مِّمَّا يَمْكُرُونَ ﴿١٢٧﴾

१२८) निश्चित मान कि जो आत्मसंयमी र असल छन्, अल्लाह मात्र उनीसँग छ ।

إِنَّ اللَّهَ مَعَ الَّذِينَ اتَّقَوا وَّالَّذِينَ هُم مُّحْسِنُونَ ﴿١٢٨﴾



# सूरतुल् इस्रा-१७



सूरतुल् इस्रा मक्की हो । यसमा १११ आयतहरू र १२ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

سُبْحٰنَ الَّذِيْٓ اَسْرٰى بِعَبْدِهٖ لَيْلًا مِّنَ الْمَسْجِدِ الْحَرَامِ اِلَى الْمَسْجِدِ الْاَقْصَا الَّذِيْ بٰرَكْنَا حَوْلَهٗ لِنُرِيَهٗ مِنْ اٰيٰتِنَا ۭ اِنَّهٗ هُوَ السَّمِيْعُ الْبَصِيْرُ ①

१) त्यो अल्लाह अत्यन्त पवित्र छ, जसले एकै रातमा आफ्नो भक्तलाई मस्जिदुल हराम (कअ्बा) बाट मस्जिदे अक्सा (बैतुल मुकद्दस) सम्म लिएर गयो, जसको चारैतिर मैले बरकत दिई राखेकोछु यसका लागि कि हामीले उसलाई आफ्नो केही निशानीहरू देखाउन सकौं । निःसन्देह अल्लाह नै धेरै सुन्नेवाला र देख्नेवाला हो ।

وَاٰتَيْنَا مُوْسَى الْكِتٰبَ وَجَعَلْنٰهُ هُدًى لِّبَنِيْٓ اِسْرَاۗءِيْلَ اَلَّا تَتَّخِذُوْا مِنْ دُوْنِيْ وَكِيْلًا ②

२) र हामीले मूसालाई किताब प्रदान गरेका थियौं र उसलाई बनी इस्राईलको निम्ति पथपदर्शक बनाएका थियौं । कि म बाहेक कसैलाई स्रष्टा नठहराउनु ।

ذُرِّيَّةَ مَنْ حَمَلْنَا مَعَ نُوْحٍ ۭ اِنَّهٗ كَانَ عَبْدًا شَكُوْرًا ③

३) हे ती मानिसहरूका सन्तति जसलाई हामीले नूहका साथ (डुङ्गामा) सवार गरेका थियौं, निःसन्देह नूह (हाम्रा) आभारी भक्त थिए ।

وَقَضَيْنَآ اِلٰى بَنِيْٓ اِسْرَاۗءِيْلَ فِي الْكِتٰبِ لَتُفْسِدُنَّ فِي الْاَرْضِ مَرَّتَيْنِ وَلَتَعْلُنَّ عُلُوًّا كَبِيْرًا ④

४) हामीले बनी इस्राईलको लागि उनको किताबमा स्पष्ट फैसला गरेका थियौं, कि तिमीले पृथ्वीमा

दुई पटक उपद्रव मच्चाउने छौ र ठूलो उदण्डता गर्ने छौ ।

فَإِذَا جَآءَ وَعْدُ أُولٰىهُمَا بَعَثْنَا عَلَيْكُمْ عِبَادًا لَّنَآ أُو۟لِى
بَأْسٍ شَدِيدٍ فَجَاسُوا۟ خِلَٰلَ ٱلدِّيَارِ ۚ وَكَانَ
وَعْدًا مَّفْعُولًا ﴿٥﴾

५) तसर्थ यी दुई मध्ये जब पहिलो (वचन) को समय आयो त हामीले आफ्ना भीषण युद्ध गर्ने हाम्रा दासहरू तिम्रा मुकाबिलामा पठायौं र तिनीहरू तिम्रा घरका भित्रि भागमा पनि फैलिहाले र अल्लाहको त्यो वचन पूरा हुने नै थियो ।

ثُمَّ رَدَدْنَا لَكُمُ ٱلْكَرَّةَ عَلَيْهِمْ وَأَمْدَدْنَٰكُم
بِأَمْوَٰلٍ وَبَنِينَ وَجَعَلْنَٰكُمْ أَكْثَرَ نَفِيرًا ﴿٦﴾

६) फेरि हामीले तिमीलाई तिनीहरूमाथि अधिपत्य प्रदान गरेर तिम्रो दिन फेऱ्यौं र छोराहरूमा र धन सम्पत्तिमा वृद्धि गरी मद्दत गऱ्यौं र तिमीलाई ठूलो जथ्थावाला बनाइदियौं ।

إِنْ أَحْسَنتُمْ أَحْسَنتُمْ لِأَنفُسِكُمْ ۖ وَإِنْ
أَسَأْتُمْ فَلَهَا ۚ فَإِذَا جَآءَ وَعْدُ ٱلْءَاخِرَةِ لِيَسُۥٓـُٔوا۟
وُجُوهَكُمْ وَلِيَدْخُلُوا۟ ٱلْمَسْجِدَ كَمَا دَخَلُوهُ
أَوَّلَ مَرَّةٍ وَلِيُتَبِّرُوا۟ مَا عَلَوْا۟ تَتْبِيرًا ﴿٧﴾

७) यदि तिमीले असल कर्म गर्छौ भने आफ्नै फाइदाको लागि र यदि दुष्कर्म गर्दछौ भने तिनको परिणाम पनि तिमीले नै भोग्नु पर्नेछ । अनि जब दोस्रो वचनको (समय) आयो, (त अर्का भक्त पठायौं) ताकि तिम्रा अनुहार बिगारिदेऊन् र पहिलो चोटी जस्तै त्यस मस्जिद (बैतुल मुकद्दस) मा प्रवेश गरिहालुन् । र जुन-जुन कुरा माथि नियन्त्रण गरुन्, तोड फोड गरी त्यसलाई नष्ट गरिहालुन् ।

عَسَىٰ رَبُّكُمْ أَن يَرْحَمَكُمْ ۚ وَإِنْ عُدتُّمْ عُدْنَا ۘ وَجَعَلْنَا
جَهَنَّمَ لِلْكَٰفِرِينَ حَصِيرًا ﴿٨﴾

८) आशा छ, कि तिम्रो पालनकर्ताले तिमीमाथि दया गरोस्, र यदि तिमी पुनः गर्न थाल्छौ भने हामीले

पनि त्यही (पहिला जस्तो व्यवहार) गर्नेछौं, र हामीले नर्कलाई इन्कार गर्नेहरूको निम्ति कारागारको रूपमा राखेका छौं ।

إِنَّ هَٰذَا الْقُرْآنَ يَهْدِي لِلَّتِي هِيَ أَقْوَمُ وَيُبَشِّرُ الْمُؤْمِنِينَ الَّذِينَ يَعْمَلُونَ الصَّالِحَاتِ أَنَّ لَهُمْ أَجْرًا كَبِيرًا ﴿٩﴾

९) निःसन्देह यस कुरआनले त्यो बाटो देखाउँछ जो सबैभन्दा सोझो छ, र मोमिनहरूलाई जसले सत्कर्म गर्दछन्, शुभसन्देश दिन्छ कि तिनीहरूको निम्ति ठूलो पुरस्कार छ ।

وَأَنَّ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ أَعْتَدْنَا لَهُمْ عَذَابًا أَلِيمًا ﴿١٠﴾

१०) र यो कि जो आखिरतमाथि ईमान राख्दैनन्, तिनीहरूको निम्ति हामीले कष्टदायक सजाय तयार गरि राखेका छौं ।

وَيَدْعُ الْإِنسَانُ بِالشَّرِّ دُعَاءَهُ بِالْخَيْرِ ۖ وَكَانَ الْإِنسَانُ عَجُولًا ﴿١١﴾

११) र मानिसले नराम्रा कुरोको लागि प्रार्थना गर्न थाल्छ एकदमै आफनो भलोको लागि गरेको प्रार्थना जस्तै । र मानिस छदैछ हतार गर्ने प्राणी ।

وَجَعَلْنَا اللَّيْلَ وَالنَّهَارَ آيَتَيْنِ ۖ فَمَحَوْنَا آيَةَ اللَّيْلِ وَجَعَلْنَا آيَةَ النَّهَارِ مُبْصِرَةً لِّتَبْتَغُوا فَضْلًا مِّن رَّبِّكُمْ وَلِتَعْلَمُوا عَدَدَ السِّنِينَ وَالْحِسَابَ ۚ وَكُلَّ شَيْءٍ فَصَّلْنَاهُ تَفْصِيلًا ﴿١٢﴾

१२) हामीले दिन, रातलाई निशानीहरू बनाएका छौं, रातको निशानीलाई त हामीले प्रकाश रहित बनाएका छौं र दिनको निशानीलाई उज्यालो, ताकि तिमीले आफ्नो पालनकर्ताको कृपा (जीविका) खोज र वर्षहरूका गिन्ती र हिसाब जान्न सक र हामीले प्रत्येक कुरालाई सविस्तार वर्णन गरेका छौं ।

وَكُلَّ إِنسَانٍ أَلْزَمْنَاهُ طَائِرَهُ فِي عُنُقِهِ ۖ وَنُخْرِجُ لَهُ يَوْمَ الْقِيَامَةِ كِتَابًا يَلْقَاهُ مَنشُورًا ﴿١٣﴾

१३) हामीले प्रत्येक मानिसको राम्रो, नराम्रो कार्यलाई उसको घाँटीमा झुण्डाइदिएका छौं, र कियामतको

दिन (त्यो) हिसाब उसलाई झिकेर देखाउने छौं, जसलाई उसले खुला रूपमा पाउने छ ।

१४) (भनिने छः कि) ल आफ्नो किताब आफैं पढिहाल, तिमी आज आफ्नो हिसाब आफैं लिन प्रयाप्त छौ ।

اِقْرَاْ كِتٰبَكَ ؕ كَفٰى بِنَفْسِكَ الْيَوْمَ عَلَيْكَ حَسِيْبًا ﴿١٤﴾

१५) जसले सही बाटो अपनाउँछ ऊ आफ्नो निम्ति अपनाउँछ, र जो मार्ग विचलित हुन्छ त पथभ्रष्टताको भारी पनि उसैलाई हुने छ, र कसैले अर्काको भारी उठाउने छैन, र जबसम्म हामीले पैगम्बर पठाउँदैनौं, तबसम्म सजाय दिने गर्दैनौं ।

مَنِ اهْتَدٰى فَاِنَّمَا يَهْتَدِيْ لِنَفْسِهٖ ۚ وَمَنْ ضَلَّ فَاِنَّمَا يَضِلُّ عَلَيْهَا ؕ وَلَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ؕ وَمَا كُنَّا مُعَذِّبِيْنَ حَتّٰى نَبْعَثَ رَسُوْلًا ﴿١٥﴾

१६) र जब हाम्रो इच्छा कुनै बस्तीलाई ध्वस्त पार्ने हुन्छ भने त्यहाँका सम्पन्न मानिसहरूलाई, केही आदेश दिन्छौं र तिनीहरूले त्यस बस्तीमा उल्लंघनकारी काम गर्न थाल्छन् अनि तिनीहरूमाथि सजायको कुरा प्रमाणित भइहाल्छ फेरि हामीले उनीहरूलाई नष्ट गरिहाल्छौं ।

وَاِذَاۤ اَرَدْنَاۤ اَنْ نُّهْلِكَ قَرْيَةً اَمَرْنَا مُتْرَفِيْهَا فَفَسَقُوْا فِيْهَا فَحَقَّ عَلَيْهَا الْقَوْلُ فَدَمَّرْنٰهَا تَدْمِيْرًا ﴿١٦﴾

१७) हामीले नूह पश्चात पनि धेरै पुस्ताहरूलाई खतम गरिहाल्यौं । र तिम्रो पालनकर्ता आफ्ना भक्तहरूका पापहरूहरूलाई जान्ने र देख्नेवाला पर्याप्त छ ।

وَكَمْ اَهْلَكْنَا مِنَ الْقُرُوْنِ مِنْۢ بَعْدِ نُوْحٍ ؕ وَكَفٰى بِرَبِّكَ بِذُنُوْبِ عِبَادِهٖ خَبِيْرًاۢ بَصِيْرًا ﴿١٧﴾

१८) जो मानिस सांसारिक फाइदाको इच्छुक हुन्छ, उसलाई हामीले जसलाई र जति चाहन्छौं छिट्टै

مَنْ كَانَ يُرِيْدُ الْعَاجِلَةَ عَجَّلْنَا لَهٗ فِيْهَا مَا نَشَآءُ لِمَنْ نُّرِيْدُ ثُمَّ جَعَلْنَا لَهٗ جَهَنَّمَ ۚ يَصْلٰىهَا مَذْمُوْمًا مَّدْحُوْرًا ﴿١٨﴾

दिन्छौं, अनि अन्तिममा उसको निम्ति हामीले नर्कको बास निर्धारित गर्दछौं जहाँ तिनीहरू त्यसमा अपमानित र तिरस्कृत भई प्रवेश गर्नेछन् ।

وَمَنْ أَرَادَ الْآخِرَةَ وَسَعَىٰ لَهَا سَعْيَهَا وَهُوَ مُؤْمِنٌ فَأُولَٰئِكَ كَانَ سَعْيُهُم مَّشْكُورًا ﴿١٩﴾

१९) र जुन मानिसले आखिरतको इच्छा गर्दछ र त्यसमा यति प्रयास गर्दछ जति उसले गर्न सक्दछ र ऊ मोमिन पनि छ भने, त्यस्ता मानिसहरूको प्रयास अल्लाहले पूरै स्वीकार गर्दछ ।

كُلًّا نُّمِدُّ هَٰؤُلَاءِ وَهَٰؤُلَاءِ مِنْ عَطَاءِ رَبِّكَ ۚ وَمَا كَانَ عَطَاءُ رَبِّكَ مَحْظُورًا ﴿٢٠﴾

२०) हरेकलाई हामीले (रोजी) पुऱ्याउँदै जान्छौं । यिनीहरूलाई र तिनीहरूलाई पनि, तिम्रो पालनकर्ताको उपहारबाट र तिम्रो स्वामीको वरदान बन्द भएको छैन ।

انظُرْ كَيْفَ فَضَّلْنَا بَعْضَهُمْ عَلَىٰ بَعْضٍ ۚ وَلَلْآخِرَةُ أَكْبَرُ دَرَجَاتٍ وَأَكْبَرُ تَفْضِيلًا ﴿٢١﴾

२१) हेर ! हामीले कसरी केहीलाई केही माथि प्रधानमा प्रदान गरेका छौं र आखिरत (अन्तिममा) त श्रेणीहरूमा धेरै उच्च छ र महत्वमा निकै बढि छ ।

لَّا تَجْعَلْ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ فَتَقْعُدَ مَذْمُومًا مَّخْذُولًا ﴿٢٢﴾

२२) अल्लाहको साथमा अन्य कसैलाई पूजनीय नठान, अन्यथा तिमी अन्तमा अपमानित र नि:सहाय भएर बस्ने छौ ।

وَقَضَىٰ رَبُّكَ أَلَّا تَعْبُدُوا إِلَّا إِيَّاهُ وَبِالْوَالِدَيْنِ إِحْسَانًا ۚ إِمَّا يَبْلُغَنَّ عِندَكَ الْكِبَرَ أَحَدُهُمَا أَوْ كِلَاهُمَا فَلَا تَقُل لَّهُمَا أُفٍّ وَلَا تَنْهَرْهُمَا وَقُل لَّهُمَا قَوْلًا كَرِيمًا ﴿٢٣﴾

२३) र तिम्रो पालनकर्ताले स्पष्ट आदेश गरेको छ कि ऊ बाहेक तिमी कसैको पूजा नगर र आमा-बाबुको साथमा नम्र व्यवहार गर्दै गर यदि तिनीहरूमध्ये एउटा वा दुवै

तिम्रो अगाडि वृद्ध अवस्थामा पुग्छन् भने तिनीहरूलाई तिरस्कृत नगर्नु नहप्काउनु अपितु तिनीहरूसँग सम्मानपूर्वक मर्यादित ढंगले कुराकानी गर्नु ।

وَاخْفِضْ لَهُمَا جَنَاحَ الذُّلِّ مِنَ الرَّحْمَةِ وَقُل رَّبِّ ارْحَمْهُمَا كَمَا رَبَّيَانِي صَغِيرًا ﴿٢٤﴾

२४) र विनम्रतापूर्वक प्यारका साथ तिनीहरूको अगाडि सुशील भइराख र तिनीहरूको निम्ति प्रार्थना गर्ने गर: कि हे पालकर्ता जुन प्रकार कि तिनीहरूले मलाई बाल्यावस्थामा (मायाँले) पालन-पोषण गरेका छन्, तिमीले पनि तिनीहरूमाथि त्यस्तै दया गर ।

رَّبُّكُمْ أَعْلَمُ بِمَا فِي نُفُوسِكُمْ ۚ إِن تَكُونُوا صَالِحِينَ فَإِنَّهُ كَانَ لِلْأَوَّابِينَ غَفُورًا ﴿٢٥﴾

२५) जे जति तिम्रो हृदयहरूमा छ, तिम्रो पालनकर्ताले त्यसलाई राम्ररी जान्दछ । यदि तिमी असल कर्म गर्दछौ भने उसले त्यसतिर प्रवृत्त हुनेहरूलाई क्षमा गरिदिनेछ ।

وَآتِ ذَا الْقُرْبَىٰ حَقَّهُ وَالْمِسْكِينَ وَابْنَ السَّبِيلِ وَلَا تُبَذِّرْ تَبْذِيرًا ﴿٢٦﴾

२६) र नातेदारहरू र निमुखाहरू र बटुवाहरूलाई उनीहरूको हक प्रदान गर, र अपव्ययिताले धन खर्च नगर ।

إِنَّ الْمُبَذِّرِينَ كَانُوا إِخْوَانَ الشَّيَاطِينِ ۖ وَكَانَ الشَّيْطَانُ لِرَبِّهِ كَفُورًا ﴿٢٧﴾

२७) किन भने फाल्तू खर्च गर्नेहरू त शैतानका दाजुभाइहरू हुन् र शैतान आफ्नो पालनहारको प्रति ठूलो कृतघ्न छ ।

وَإِمَّا تُعْرِضَنَّ عَنْهُمُ ابْتِغَاءَ رَحْمَةٍ مِّن رَّبِّكَ تَرْجُوهَا فَقُل لَّهُمْ قَوْلًا مَّيْسُورًا ﴿٢٨﴾

२८) र यदि तिमी आफ्नो पालनकर्ताको रहमत् (वरदान) को प्रतिक्षामा, जसको कि तिमीलाई आशा छ, तिनीहरू (हकदारहरू) तिर ध्यान

दिन सक्दैनौं भने तिनीहरूसित विनम्रतापूर्वक राम्रोसँग कुरा भन्ने गर ।

२९) आफ्नो हातलाई न आफ्नो गर्दनसित बाँधिएको, जस्तो राख । र नत बिल्कुलै खुल्ला गर्नु (कि सबै दिइहाल) र परिणाम यो होस् कि पश्चातापमा दोषी र असहाय हुनुपरोस् ।

وَلَا تَجۡعَلۡ يَدَكَ مَغۡلُولَةً إِلَىٰ عُنُقِكَ وَلَا تَبۡسُطۡهَا كُلَّ ٱلۡبَسۡطِ فَتَقۡعُدَ مَلُومٗا مَّحۡسُورًا ٢٩

३०) निःसन्देह तिम्रो पालनकर्ताले, जसको जीविका चाहन्छ, विस्तृत गरिदिन्छ र जस्को चाहन्छ संकुचित पारिदिन्छ । निःसन्देह उसले आफ्ना भक्तहरूलाई बेसरी जान्दछ र राम्ररी हेरिराखेको हुन्छ ।

إِنَّ رَبَّكَ يَبۡسُطُ ٱلرِّزۡقَ لِمَن يَشَآءُ وَيَقۡدِرُۚ إِنَّهُۥ كَانَ بِعِبَادِهِۦ خَبِيرَۢا بَصِيرٗا ٣٠

३१) र आफ्ना सन्तानहरूलाई विपन्नताको डरले नमार (किनभने) उनीहरूलाई, र तिमीलाई हामीलेनै जीविका प्रदान गर्दछौं । यसमा कुनै सन्देह छैन कि यिनीहरूलाई मार्नु गम्भीर पाप हो ।

وَلَا تَقۡتُلُوٓاْ أَوۡلَٰدَكُمۡ خَشۡيَةَ إِمۡلَٰقٖۖ نَّحۡنُ نَرۡزُقُهُمۡ وَإِيَّاكُمۡۚ إِنَّ قَتۡلَهُمۡ كَانَ خِطۡـٔٗا كَبِيرٗا ٣١

३२) खबरदार व्यभिचारतिर कदापि नलाग, किनभने त्यो ठूलो निर्लज्जता र धेरै नराम्रो बाटो हो ।

وَلَا تَقۡرَبُواْ ٱلزِّنَىٰٓۖ إِنَّهُۥ كَانَ فَٰحِشَةٗ وَسَآءَ سَبِيلٗا ٣٢

३३) र जुन प्राणीलाई मार्नु अल्लाहले निषेध गरेको छ, त्यसलाई न्यायोचित कारण बिना नमार । र जुन मानिस अत्याचारले मारिएको छ, हामीले त्यसको वारिसलाई (बराबरका बदला लिन) अख्तियार दिएका छौं तसर्थ

وَلَا تَقۡتُلُواْ ٱلنَّفۡسَ ٱلَّتِي حَرَّمَ ٱللَّهُ إِلَّا بِٱلۡحَقِّۗ وَمَن قُتِلَ مَظۡلُومٗا فَقَدۡ جَعَلۡنَا لِوَلِيِّهِۦ سُلۡطَٰنٗا فَلَا يُسۡرِف فِّي ٱلۡقَتۡلِۖ إِنَّهُۥ كَانَ مَنصُورٗا ٣٣

उसलाई आवश्यक छ कि हत्या (बदला) मा सीमा उल्लंघन नगरोस्, किनभने त्यसो भएमा उसलाई सहायता प्राप्त हुनेछ ।

وَلَا تَقْرَبُوا مَالَ الْيَتِيمِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ حَتَّىٰ يَبْلُغَ أَشُدَّهُ ۚ وَأَوْفُوا بِالْعَهْدِ ۖ إِنَّ الْعَهْدَ كَانَ مَسْئُولًا ﴿٣٤﴾

३४) र अनाथको मालको नजिक पनि नजानु, तर यस्तो तरिकाले जुन उसको हकमा धेरै राम्रो होस् यहाँसम्म कि उसले उमेरको परिपक्कवता हासिल गरिसकोस्, र वचन पूरा गर, किनभने वाचाको बारेमा अवश्य सोधपूछ हुनेछ ।

وَأَوْفُوا الْكَيْلَ إِذَا كِلْتُمْ وَزِنُوا بِالْقِسْطَاسِ الْمُسْتَقِيمِ ۚ ذَٰلِكَ خَيْرٌ وَأَحْسَنُ تَأْوِيلًا ﴿٣٥﴾

३५) र जब नापेर दिन्छौ त माप पूरा भरी देऊ र तराजु सीधा राखेर जोख्ने गर, यो अत्यन्तै राम्रो कुरा हो र परिणामको दृष्टिले पनि धेरै राम्रो छ ।

وَلَا تَقْفُ مَا لَيْسَ لَكَ بِهِ عِلْمٌ ۚ إِنَّ السَّمْعَ وَالْبَصَرَ وَالْفُؤَادَ كُلُّ أُولَٰئِكَ كَانَ عَنْهُ مَسْئُولًا ﴿٣٦﴾

३६) जुन कुरोको तिमीलाई ज्ञानै छैन त्यसको पछि नपर्नु, किनभने कान र आँखा र हृदय यी सबै सित अवश्य सोधपूछ हुनेछ ।

وَلَا تَمْشِ فِي الْأَرْضِ مَرَحًا ۖ إِنَّكَ لَن تَخْرِقَ الْأَرْضَ وَلَن تَبْلُغَ الْجِبَالَ طُولًا ﴿٣٧﴾

३७) र धर्तीमा घमण्ड गरी नहिड्नु किनभने तिमीले धर्तीलाई च्यात्न सक्दैनौ र नत अग्लो भएर पर्वतहरूका चुचुरा सम्म पुग्न सक्नेछौ ।

كُلُّ ذَٰلِكَ كَانَ سَيِّئُهُ عِندَ رَبِّكَ مَكْرُوهًا ﴿٣٨﴾

३८) यी सबै नराम्राकुराहरू तिम्रो पालनकर्तालाई धेरै अप्रिय छ ।

ذَٰلِكَ مِمَّا أَوْحَىٰ إِلَيْكَ رَبُّكَ مِنَ الْحِكْمَةِ

३९) यो पनि ती समग्र मार्गदर्शनहरू

وَلَا تَجْعَلْ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ فَتُلْقٰى فِيْ جَهَنَّمَ مَلُوْمًا مَّدْحُوْرًا ﴿٣٩﴾

मध्येका हुन् जुन अल्लाहले बुद्धिमत्ताका साथ वह्य मार्फत तिमीतिर उतारेको छ र तिमीले अल्लाहको साथमा अन्य कसैलाई पूजनीय नबनाउनु किनभने यस्तो गर्नाले धिक्कृत तिरस्कृत भई नर्कमा हालिनेछौ ।

اَفَاَصْفٰىكُمْ رَبُّكُمْ بِالْبَنِيْنَ وَاتَّخَذَ مِنَ الْمَلٰٓئِكَةِ اِنَاثًا ۗ اِنَّكُمْ لَتَقُوْلُوْنَ قَوْلًا عَظِيْمًا ﴿٤٠﴾

४०) (मुश्रिकहरू) के तिम्रो पालनकर्ताले तिमीलाई त छोराहरूका लागि छुट्याई दिएको छ ? र आफ्नो लागि फरिश्ताहरूमध्ये छोरीहरू बनाएको छ ?। यसमा कुनै सन्देह छैन कि तिमीहरू ठूलो अनर्गल कुरा गर्दैछौ ।

وَلَقَدْ صَرَّفْنَا فِيْ هٰذَا الْقُرْاٰنِ لِيَذَّكَّرُوْا ۗ وَمَا يَزِيْدُهُمْ اِلَّا نُفُوْرًا ﴿٤١﴾

४१) हामीले यस कुरआनमा थरि-थरिका कुराहरू वर्णन गरेका छौं, कि मानिसहरू शिक्षा हासिल गर्न सकुन्, तर यसबाट उनीहरूको उपेक्षा नै झन् बढ्दै जान्छ ।

قُلْ لَّوْ كَانَ مَعَهٗٓ اٰلِهَةٌ كَمَا يَقُوْلُوْنَ اِذًا لَّابْتَغَوْا اِلٰى ذِى الْعَرْشِ سَبِيْلًا ﴿٤٢﴾

४२) भनिदिनुस् कि यदि अल्लाहको साथमा अरु पूज्यहरू भएको भए, जस्तो कि उनीहरूले भन्छन्, त तिनीहरूले अहिलेसम्म अवश्य नै सिंहासनको मालिक तिर आफ्नोबाटो बनाउने थिए ।

سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يَقُوْلُوْنَ عُلُوًّا كَبِيْرًا ﴿٤٣﴾

४३) जे जति यिनीहरूले भन्दछन् त्यसभन्दा ऊ धेरै टाढा पवित्र र (उसको मर्यादा) धेरै उच्च छ ।

تُسَبِّحُ لَهُ السَّمٰوٰتُ السَّبْعُ وَالْاَرْضُ وَمَنْ فِيْهِنَّ ۗ وَاِنْ مِّنْ شَيْءٍ اِلَّا يُسَبِّحُ بِحَمْدِهٖ وَلٰكِنْ لَّا تَفْقَهُوْنَ

४४) सातैं आकाशहरू र पृथ्वी र जे जति यिनमा छन् सबैले उसको

تَسْبِيحَهُمْ ۗ إِنَّهُ كَانَ حَلِيمًا غَفُورًا ﴿٤٤﴾

गुणगान गर्दछन् र कुनै यस्तो कुरो छैन जसले कि प्रशंसा र पवित्रताका साथ उसलाई स्मरण गर्दैन, हो यो ठिक हो कि तिमी उसको गुणगान बुझ्न सक्दैनौ ऊ धेरै सहनशील र क्षमादाता छ ।

وَإِذَا قَرَأْتَ الْقُرْآنَ جَعَلْنَا بَيْنَكَ وَبَيْنَ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ حِجَابًا مَّسْتُورًا ﴿٤٥﴾

४५) जब तिमीले कुरआन पढ्दछौ, त हामीले तिमी र उनीहरूको बीचमा जसले आखिरतमाथि आस्था राख्दैनन् गोप्य आवरण हालिदिन्छौं ।

وَجَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۚ وَإِذَا ذَكَرْتَ رَبَّكَ فِي الْقُرْآنِ وَحْدَهُ وَلَّوْا عَلَىٰ أَدْبَارِهِمْ نُفُورًا ﴿٤٦﴾

४६) र उनीहरूको हृदयमाथि हामीले नै परदा हालि दिएका छौं, कि उनी यसलाई सम्झुन् र उनको कानमा (बहिरोपना) बोझ । र जब तिमी यस कुरआनमा एकेश्वरवादका साथ मात्र अल्लाहको स्तुति गर्दछौ, तब उनीहरूले बेवास्ता गर्दै पिठ्यू फर्काई भागीहाल्छन् ।

نَّحْنُ أَعْلَمُ بِمَا يَسْتَمِعُونَ بِهِ إِذْ يَسْتَمِعُونَ إِلَيْكَ وَإِذْ هُمْ نَجْوَىٰ إِذْ يَقُولُ الظَّالِمُونَ إِن تَتَّبِعُونَ إِلَّا رَجُلًا مَّسْحُورًا ﴿٤٧﴾

४७) जुन उद्देश्यले तिनीहरू यसलाई सुन्दछन्, उनको नीयतसँग हामी राम्ररी परिचित छौं । जब तिनीहरूले तपाई तर्फ कान थापी रहेका हुन्छन्, तब पनि र जब तिनीहरूले सर-सल्लाह गर्दछन् तब पनि जब यी अत्यचारीहरूले भन्दछन् कि तिमी उसको अनुकरण गरिरहेका छौ जसमाथि जादू गरिएको छ ।

انظُرْ كَيْفَ ضَرَبُوا لَكَ الْأَمْثَالَ فَضَلُّوا فَلَا يَسْتَطِيعُونَ سَبِيلًا ﴿٤٨﴾

४८) हेरौ त, तपाईको लागि कस्ता-कस्ता उदाहरणहरू प्रस्तुत गर्दछन्, तिनीहरू

बहकी रहेका छन् । अब त बाटो भेटाउनु उनीहरूको वशमा छैन ।

४९) उनीहरू भन्दछन कि के हामी हाड र माटो टुक्रा-टुक्रा भएर बिलीन भई सक्नेछौं त के हामी फेरि पैदा भएर अर्को चोटी उठाएर उभ्याइने छौं ।

وَقَالُوٓا أَءِذَا كُنَّا عِظَامًا وَرُفَاتًا أَءِنَّا لَمَبْعُوثُونَ خَلْقًا جَدِيدًا ﴿٤٩﴾

५०) जवाफ दिनुस् कि तिमी ढुङ्गा बन अथवा फलाम बनी हाल ।

قُلْ كُونُوا حِجَارَةً أَوْ حَدِيدًا ﴿٥٠﴾

५१) अथवा अन्य कुनै अरु वस्तु जो तिमीलाई अत्यन्त कठोर लाग्दछ । फेरि तिनीहरूले यो सोध्छन् कि को हो जसले पुनः हाम्रो जीवन फर्काउँछ ? तपाईले जवाफ दिनुस् कि उही अल्लाह हो जसले तिमीलाई पहिलो चोटी पैदा गरेको थियो । यसमा तिनीहरूले टाउको हल्लाई-हल्लाईकन तपाई सँग सोध्नेछन् कि त्यसो भए यो कहिले हुनेछ ? अनि तपाईले जवाफ दिनुस् कि के थाह त्यो (घडी) चाँडै आउन लागेको छ ।

أَوْ خَلْقًا مِّمَّا يَكْبُرُ فِي صُدُورِكُمْ ۚ فَسَيَقُولُونَ مَن يُعِيدُنَا ۖ قُلِ الَّذِي فَطَرَكُمْ أَوَّلَ مَرَّةٍ ۚ فَسَيُنْغِضُونَ إِلَيْكَ رُءُوسَهُمْ وَيَقُولُونَ مَتَىٰ هُوَ ۖ قُلْ عَسَىٰ أَن يَكُونَ قَرِيبًا ﴿٥١﴾

५२) जुन दिन त्यसले तिमीलाई बोलाउनेछ, त तिमीले उसको प्रशंसा गर्दै उसको आज्ञापालन गर्नेछौ र तिमी अनुभव गर्नेछौ कि तिम्रो बसाई एकदम थोरै छ ।

يَوْمَ يَدْعُوكُمْ فَتَسْتَجِيبُونَ بِحَمْدِهِ وَتَظُنُّونَ إِن لَّبِثْتُمْ إِلَّا قَلِيلًا ﴿٥٢﴾

५३) र मेरा भक्तहरूलाई भनिदिनुस् कि तिनीहरूले धेरै राम्रा कुरा गर्ने गरुन् किनभने शैतानले तिनीहरूको बीचमा कलह सृजित गरी रहन्छ ।

وَقُل لِّعِبَادِي يَقُولُوا الَّتِي هِيَ أَحْسَنُ ۚ إِنَّ الشَّيْطَانَ يَنزَغُ بَيْنَهُمْ ۚ إِنَّ الشَّيْطَانَ كَانَ لِلْإِنسَانِ عَدُوًّا مُّبِينًا ﴿٥٣﴾

निःसन्देह शैतान मानिसको खुल्ला शत्रु हो ।

رَبُّكُمْ أَعْلَمُ بِكُمْ ۖ إِن يَشَأْ يَرْحَمْكُمْ أَوْ إِن يَشَأْ يُعَذِّبْكُمْ ۚ
وَمَا أَرْسَلْنَاكَ عَلَيْهِمْ وَكِيلًا ﴿٥٤﴾

५४) तिम्रो पालनकर्ता तिमी भन्दा धेरै जान्दछ । उसले चाहेको खण्डमा तिमीमाथि दया गर्दछ वा यदि चाहन्छ भने तिमीलाई दण्ड दिन्छ, हामीले तपाईलाई तिनीहरूको जिम्मेदार ठहऱ्याएर पठाएका होइनौं ।

وَرَبُّكَ أَعْلَمُ بِمَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۗ وَلَقَدْ
فَضَّلْنَا بَعْضَ النَّبِيِّينَ عَلَىٰ بَعْضٍ ۖ وَآتَيْنَا دَاوُودَ زَبُورًا ﴿٥٥﴾

५५) आकाशहरू र पृथ्वीमा जे जति छन्, तिनीहरूको बारे तपाईको पालनहारलाई सबै राम्ररी थाहा छ हामीले केही संदेष्टाहरूलाई केही माथि प्रधानता प्रदान गऱ्यौं र दाऊदलाई हामीले "ज़बूर" दियौं ।

قُلِ ادْعُوا الَّذِينَ زَعَمْتُم مِّن دُونِهِ فَلَا يَمْلِكُونَ
كَشْفَ الضُّرِّ عَنكُمْ وَلَا تَحْوِيلًا ﴿٥٦﴾

५६) भनिदिनुस् कि अल्लाह बाहेक जसलाई तिमीहरू पूजनीय ठानेका छौ, तिनीहरूलाई पुकारेर हेर, तिनीहरूमा तिमीबाट कष्ट दूर गर्ने वा त्यसलाई परिवर्तन गरी दिने कुनै सामर्थ्य छैन ।

أُولَٰئِكَ الَّذِينَ يَدْعُونَ يَبْتَغُونَ إِلَىٰ رَبِّهِمُ الْوَسِيلَةَ
أَيُّهُمْ أَقْرَبُ وَيَرْجُونَ رَحْمَتَهُ وَيَخَافُونَ عَذَابَهُ ۚ
إِنَّ عَذَابَ رَبِّكَ كَانَ مَحْذُورًا ﴿٥٧﴾

५७) उनीहरू, जसलाई पुकार्दछन् तिनीहरू स्वयम् आफ्ना पालनकर्ता कहाँ पहुँचको माध्यम खोज्दछन्, कि तिनीहरू मध्ये कुन धेरै नजिक हुन सक्दछ । उनीहरू स्वयम् उसको दयाको आशामा रहन्छन्, र उसको दण्डसित भयभीत रहन्छन् ? निःसन्देह तिम्रो पालनकर्ताको सजाय डर्नु पर्ने कुरो नै हो ।

وَإِن مِّن قَرْيَةٍ إِلَّا نَحْنُ مُهْلِكُوهَا قَبْلَ يَوْمِ الْقِيَامَةِ أَوْ مُعَذِّبُوهَا عَذَابًا شَدِيدًا ۚ كَانَ ذَٰلِكَ فِي الْكِتَابِ مَسْطُورًا ﴿٥٨﴾

५८) जे जति अबादीहरू छन् हामीले कियामतको दिनभन्दा अगावै त्यसलाई नष्ट गरिदिन्छौं अथवा गम्भीर सजाय दिनेछौं । यो कुरा त किताबमा लेखिसकिएको छ ।

وَمَا مَنَعَنَا أَن نُّرْسِلَ بِالْآيَاتِ إِلَّا أَن كَذَّبَ بِهَا الْأَوَّلُونَ ۚ وَآتَيْنَا ثَمُودَ النَّاقَةَ مُبْصِرَةً فَظَلَمُوا بِهَا ۚ وَمَا نُرْسِلُ بِالْآيَاتِ إِلَّا تَخْوِيفًا ﴿٥٩﴾

५९) हामीले निशानीहरू (वा चमत्कार) पठाउन यस कारणले बन्द गरिदियौं कि पहिलेका मानिसहरू तिनलाई भूठा भन्ने गर्थे । र हामीले समूदलाई चमत्कारको रूपमा ऊँटनी प्रदान गर्‍यौं तर तिनीहरूले त्यसमाथि अत्याचार गरे । र हामीले मानिसहरूलाई डराउनका लागि निशानीहरू पठाउने गर्दछौं ।

وَإِذْ قُلْنَا لَكَ إِنَّ رَبَّكَ أَحَاطَ بِالنَّاسِ ۚ وَمَا جَعَلْنَا الرُّؤْيَا الَّتِي أَرَيْنَاكَ إِلَّا فِتْنَةً لِّلنَّاسِ وَالشَّجَرَةَ الْمَلْعُونَةَ فِي الْقُرْآنِ ۚ وَنُخَوِّفُهُمْ فَمَا يَزِيدُهُمْ إِلَّا طُغْيَانًا كَبِيرًا ﴿٦٠﴾

६०) र (स्मरण गर्नुस्) जब हामीले तपाईसित भन्यौं कि तपाईको पालनकर्ता मानिसहरूलाई घेरामा लिई सकेको छ, र जुन दृश्य हामीले तपाईलाई देखायौं त्यो मानिसहरूको परीक्षाको लागि थियो र यस्तै त्यो रुखलाई पनि, जसमाथि कुरआनमा घृणा भनिएको छ । हामीले तिनीहरूलाई डराई राखेकाछौं । तर यसले तिनीहरूको गम्भीर उद्दण्डता भन् बढ़ाइरहेछ ।

وَإِذْ قُلْنَا لِلْمَلَائِكَةِ اسْجُدُوا لِآدَمَ فَسَجَدُوا إِلَّا إِبْلِيسَ قَالَ أَأَسْجُدُ لِمَنْ خَلَقْتَ طِينًا ﴿٦١﴾

६१) जब हामीले फरिश्ताहरूलाई भन्यौं कि आदमलाई ढोग, त इब्लीस बाहेक सबले ढोगे । उसले भन्यो कि के म यस्तो व्यक्तिलाई ढोगूँ,

जसलाई तिमीले माटोबाट सृष्टि गरेका छौ ?

قَالَ أَرَءَيْتَكَ هَٰذَا ٱلَّذِى كَرَّمْتَ عَلَىَّ لَئِنْ أَخَّرْتَنِ إِلَىٰ يَوْمِ ٱلْقِيَٰمَةِ لَأَحْتَنِكَنَّ ذُرِّيَّتَهُۥٓ إِلَّا قَلِيلًا ٦٢

६२) (इब्लीस) भन्न थाल्यो: कि हेर यहि हो जसलाई तिमीले ममाथि श्रेष्ठता प्रदान गरेका छौ, तर यदि तिमीले मलाई पनि कियामतको दिनसम्म मोहलत दिने छौ भने म केही व्यक्तिहरू बाहेक उसको सन्ततिलाई आफ्नो अधीनमा गर्नेछु ।

قَالَ ٱذْهَبْ فَمَن تَبِعَكَ مِنْهُمْ فَإِنَّ جَهَنَّمَ جَزَآؤُكُمْ جَزَآءً مَّوْفُورًا ٦٣

६३) अल्लाहबाट हुकुम भयो कि (यहाँबाट) गइहाल । यिनीहरूमध्ये जुन मानिसले तिम्रो अनुशरण गर्नेछन्, ती सबैको सजाय नर्क हो । जो पूरा-पूर बदला हो ।

وَٱسْتَفْزِزْ مَنِ ٱسْتَطَعْتَ مِنْهُم بِصَوْتِكَ وَأَجْلِبْ عَلَيْهِم بِخَيْلِكَ وَرَجِلِكَ وَشَارِكْهُمْ فِى ٱلْأَمْوَٰلِ وَٱلْأَوْلَٰدِ وَعِدْهُمْ ۚ وَمَا يَعِدُهُمُ ٱلشَّيْطَٰنُ إِلَّا غُرُورًا ٦٤

६४) तिनीहरूमध्ये जसलाई तिमीले आफ्नो आवाजबाट बहकाउन सक्छौ, बहकाउँदै गर, र उनीहरूमाथि आफ्ना घोडसवार र पैदल सिपाहीहरूबाट आक्रमण गर्दै गर, र तिनीहरूको माल र सन्तानहरूमा पनि आफू शम्मिलित हुँदै गर, र तिनीहरूसित झूठा वाचा गर्दै गर । र शैतानले जतिपनि वाचा तिनीहरूसँग गर्ने गर्दछ त्यो सबै धोका हो ।

إِنَّ عِبَادِى لَيْسَ لَكَ عَلَيْهِمْ سُلْطَٰنٌ ۚ وَكَفَىٰ بِرَبِّكَ وَكِيلًا ٦٥

६५) मेरा सच्चा भक्तहरूहरूमाथि तिम्रो कुनै जोड लाग्दैन र तिम्रो पालनकर्ता सबै कुरा सम्पन्न गर्न पर्याप्त छ ।

رَبُّكُمُ الَّذِي يُزْجِي لَكُمُ الْفُلْكَ فِي الْبَحْرِ لِتَبْتَغُوا مِن فَضْلِهِ ۚ إِنَّهُ كَانَ بِكُمْ رَحِيمًا ﴿٦٦﴾

६६) तिम्रो पालनकर्ता त्यो नै हो, जसले तिम्रो निम्ति समुद्रमा डुँङ्गा सञ्चालित गर्दछ, जसबाट तिमीले उसको कृपाले जीविका खोज्न सक । ऊ तिमीमाथि धेरै दयावान छ ।

وَإِذَا مَسَّكُمُ الضُّرُّ فِي الْبَحْرِ ضَلَّ مَن تَدْعُونَ إِلَّا إِيَّاهُ ۖ فَلَمَّا نَجَّاكُمْ إِلَى الْبَرِّ أَعْرَضْتُمْ ۚ وَكَانَ الْإِنسَانُ كَفُورًا ﴿٦٧﴾

६७) र जब तिमीलाई समुद्रमा बिपत्ति आइपुग्छ त जसलाई तिमीले पुकार्ने गर्दछौ उही अल्लाह बाहेक सबै हराई हाल्छन्, अनि हामीले जब तिमीलाई बचाएर स्थलतिर लैजान्छौं, त तिमी विमुख भइहाल्छौ र मानिस धेरै कृतघ्न छ ।

أَفَأَمِنتُمْ أَن يَخْسِفَ بِكُمْ جَانِبَ الْبَرِّ أَوْ يُرْسِلَ عَلَيْكُمْ حَاصِبًا ثُمَّ لَا تَجِدُوا لَكُمْ وَكِيلًا ﴿٦٨﴾

६८) के तिमी आफूलाई सुरक्षित ठान्दछौ, कि अल्लाहले तिमीलाई स्थलतिर लगेर धर्तीमा धसाउन सक्दैन वा तिमीमाथि ढुङ्गाहरूको हुरी-बतास चलाउन सक्दैन अनि तिमीले आफ्नो लागि कोही रक्षक पाउन नसक ।

أَمْ أَمِنتُمْ أَن يُعِيدَكُمْ فِيهِ تَارَةً أُخْرَىٰ فَيُرْسِلَ عَلَيْكُمْ قَاصِفًا مِّنَ الرِّيحِ فَيُغْرِقَكُم بِمَا كَفَرْتُمْ ۙ ثُمَّ لَا تَجِدُوا لَكُمْ عَلَيْنَا بِهِ تَبِيعًا ﴿٦٩﴾

६९) के तिमी यस कुराबाट निर्भय छौ, कि तिमीलाई दोस्रो पटक अल्लाहले समुद्रमा लैजाने छैन र तिमी माथि तीव्र हावा चलाउने र तिम्रो कुफ्रको कारणले तिमीलाई डुबाउन सक्दैन फेरि तिमी स्वयम्कोलागि हामी विरुद्ध कोही सहयोगी पाउने छैनौ ।

وَلَقَدْ كَرَّمْنَا بَنِي آدَمَ وَحَمَلْنَاهُمْ فِي الْبَرِّ وَالْبَحْرِ وَرَزَقْنَاهُم مِّنَ الطَّيِّبَاتِ وَفَضَّلْنَاهُمْ عَلَىٰ كَثِيرٍ مِّمَّنْ خَلَقْنَا تَفْضِيلًا ﴿٧٠﴾

७०) निश्चित रूपले हामी आदमको सन्तानलाई धेरै मर्यादा प्रदान गर्‍यौं, र उनलाई जंगल र समुंद्रमा सवारी दियौं र पवित्र आधार प्रदान गर्‍यौं, र

आफ्ना धेरै प्राणीहरूमाथि श्रेष्ठता प्रदान गऱ्यौं ।

يَوْمَ نَدْعُوا كُلَّ أُنَاسٍ بِإِمَامِهِمْ ۖ فَمَنْ أُوتِيَ كِتَابَهُ بِيَمِينِهِ فَأُولَٰئِكَ يَقْرَءُونَ كِتَابَهُمْ وَلَا يُظْلَمُونَ فَتِيلًا ﴿٧١﴾

७१) जुनदिन हामी सबै समूहहरूलाई तिनीहरूका नाइके समेत बोलाउने छौं । अनि जसको (कर्महरू) किताब तिनीहरूका दाहिने हातमा दिइनेछ तिनीहरूले आफ्ना किताब खुशी साथ पढ्नेछन् र तिनीहरूमाथि लेशमात्र पनि अत्याचार हुने छैन ।

وَمَنْ كَانَ فِي هَٰذِهِ أَعْمَىٰ فَهُوَ فِي الْآخِرَةِ أَعْمَىٰ وَأَضَلُّ سَبِيلًا ﴿٧٢﴾

७२) र जो यस संसारमा अन्धा छ, ऊ आखिरतमा पनि अन्धा हुनेछ र (मुक्तिको) बाटोबाट धेरै टाढा हुनेछ ।

وَإِنْ كَادُوا لَيَفْتِنُونَكَ عَنِ الَّذِي أَوْحَيْنَا إِلَيْكَ لِتَفْتَرِيَ عَلَيْنَا غَيْرَهُ ۖ وَإِذًا لَاتَّخَذُوكَ خَلِيلًا ﴿٧٣﴾

७३) (हे पैगम्बर) जुन वह्य (सन्देश) हामीले तपाईतिर पठाएका छौं, यी (काफिरहरू) त्यसबाट तपाईलाई विचलित गराउन चाहन्छन्, ताकि तपाईले यस बाहेक अरु कुराहरू नै हाम्रो बारेमा बनाइहाल, र त्यतिखेर तिनीहरूले तपाईलाई घनिष्ट मित्र बनाउने थिए ।

وَلَوْلَا أَنْ ثَبَّتْنَاكَ لَقَدْ كِدْتَ تَرْكَنُ إِلَيْهِمْ شَيْئًا قَلِيلًا ﴿٧٤﴾

७४) यदि हामीले तपाईको पाईला सुदृढ नराखेको भए, केही हदसम्म तपाई तिनीहरूतिर प्रवृत्त हुन सक्नु हुन्थ्यो ।

إِذًا لَأَذَقْنَاكَ ضِعْفَ الْحَيَاةِ وَضِعْفَ الْمَمَاتِ ثُمَّ لَا تَجِدُ لَكَ عَلَيْنَا نَصِيرًا ﴿٧٥﴾

७५) त्यसो भए हामीले तपाईलाई जिन्दगीमा पनि दुईगुणा सजाय र मृत्यु पश्चात पनि दुईगुणा सजायको स्वाद चखाउने थियौं, अनि तपाईले हाम्रा विरुद्ध कसैलाई आफ्ना मद्दतगार पाउने थिएनौ ।

७६) यिनीहरूले त तपाईको पाइला यस जमीन(मक्का) बाट भण्डै हटाई सकेका थिए, ताकि तपाईलाई देश निकाला गरुन् । त्यसो भए तपाई पछि यिनीहरू पनि त्यहाँ थोरै दिनसम्म रहन पाउने छन् ।

وَإِن كَادُوا لَيَسْتَفِزُّونَكَ مِنَ الْأَرْضِ لِيُخْرِجُوكَ مِنْهَا وَإِذًا لَّا يَلْبَثُونَ خِلَافَكَ إِلَّا قَلِيلًا ﴿٧٦﴾

७७) जुन पैगम्बरहरूलाई हामीले तपाईभन्दा अघि पठाएका थियौं तिनीहरूको हालत पनि यस्तै थियो । र तपाईले हाम्रो तरिकाहरूमा कहिल्यै पनि परिवर्तन पाउनु हुन्न ।

سُنَّةَ مَن قَدْ أَرْسَلْنَا قَبْلَكَ مِن رُّسُلِنَا وَلَا تَجِدُ لِسُنَّتِنَا تَحْوِيلًا ﴿٧٧﴾

७८) अपरान्ह देखि रातीको अँध्यारोसम्म (जुहर, अस्र, मग्रिब, इशाका) नमाज़ पढनेगर । र विहान (फज्रका) कुरआन पढ्ने गर, किनभने विहान कुरआन पढ्न हाजिर गरिएको छ । (फरिश्ताहरू उपस्थितिको बेला हो यो)

أَقِمِ الصَّلَاةَ لِدُلُوكِ الشَّمْسِ إِلَىٰ غَسَقِ اللَّيْلِ وَقُرْآنَ الْفَجْرِ ۖ إِنَّ قُرْآنَ الْفَجْرِ كَانَ مَشْهُودًا ﴿٧٨﴾

७९) रातका केही भागहरूमा तहज्जुदको नमाजमा कुरआनको पाठ गर्ने गर, यो अतिरिक्त प्रार्थना तपाईको निम्ति हो । छिट्टै तपाईको पालनहारले तपाईलाई मर्यादित स्थानमा पुऱ्याउने छ ।

وَمِنَ اللَّيْلِ فَتَهَجَّدْ بِهِ نَافِلَةً لَّكَ عَسَىٰ أَن يَبْعَثَكَ رَبُّكَ مَقَامًا مَّحْمُودًا ﴿٧٩﴾

८०) र प्रार्थनागर्ने गर्नुस् कि हे पालनकर्ता मलाई जहाँ लिएर जाऊ राम्रोसँग लिएर जाऊ र जहाँबाट निकाल राम्रो सँग निकाल र मलाई आफ्नो तर्फबाट शक्ति र मद्दत प्रदान गर ।

وَقُل رَّبِّ أَدْخِلْنِي مُدْخَلَ صِدْقٍ وَأَخْرِجْنِي مُخْرَجَ صِدْقٍ وَاجْعَل لِّي مِن لَّدُنكَ سُلْطَانًا نَّصِيرًا ﴿٨٠﴾

وَقُلْ جَآءَ الْحَقُّ وَزَهَقَ الْبَاطِلُ ۚ إِنَّ الْبَاطِلَ كَانَ زَهُوقًا ﴿٨١﴾

८१) र घोषणा गर्नुस् कि सत्य आइपुगेको छ, र असत्यताको विनाश भइसकेको छ । निःसन्देह असत्यता विनाश हुने नै कुरा हो ।

وَنُنَزِّلُ مِنَ الْقُرْآنِ مَا هُوَ شِفَآءٌ وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ ۙ وَلَا يَزِيدُ الظَّالِمِينَ إِلَّا خَسَارًا ﴿٨٢﴾

८२) यो कुरआन जुन हामी उतार्दैछौं मोमिनहरूका लागि स्वस्थकर र दया हो, र अत्याचारीहरूका लागि त यसबाट हानिमा नै वृद्धि हुनेछ ।

وَإِذَآ أَنْعَمْنَا عَلَى الْإِنسَانِ أَعْرَضَ وَنَأَىٰ بِجَانِبِهِ ۖ وَإِذَا مَسَّهُ الشَّرُّ كَانَ يَئُوسًا ﴿٨٣﴾

८३) र जब हामीले मानिसमाथि सुखद कृपा प्रदान गर्दछौं त उसले मुख फर्काई टाढा हुन पुग्छ, र जब उसलाई कुनै कष्ट पुग्दछ त निराश भइहाल्छ ।

قُلْ كُلٌّ يَعْمَلُ عَلَىٰ شَاكِلَتِهِ فَرَبُّكُمْ أَعْلَمُ بِمَنْ هُوَ أَهْدَىٰ سَبِيلًا ﴿٨٤﴾

८४) भनिदिनुस् कि हरेक व्यक्ति आफ्नो तरिका अनुसार काममा लागेको छ । जो पूरै सही बाटोमा लागेका छन् उनलाई तपाईको पालनकर्ताले राम्ररी जान्दछ ।

وَيَسْأَلُونَكَ عَنِ الرُّوحِ ۖ قُلِ الرُّوحُ مِنْ أَمْرِ رَبِّي وَمَآ أُوتِيتُم مِّنَ الْعِلْمِ إِلَّا قَلِيلًا ﴿٨٥﴾

८५) र तिमीसँग आत्माको (रूहको) बारेमा यिनीहरू प्रश्न गर्दछन् । भनिदिनुस् कि त्यो मेरो पालनकर्ताको हुक्मबाट छ । तिमीहरूलाई निकै कम ज्ञान प्रदान गरिएको छ ।

وَلَئِن شِئْنَا لَنَذْهَبَنَّ بِالَّذِيٓ أَوْحَيْنَآ إِلَيْكَ ثُمَّ لَا تَجِدُ لَكَ بِهِ عَلَيْنَا وَكِيلًا ﴿٨٦﴾

८६) र यदि हामीले चाहन्छौं भने जुन वह्य हामीले तपाइतिर पठाउँदछौं, त्यसलाई समाप्त गरिहालौं, अनि तपाईका लागि उसको निम्ति हाम्रो विरोधमा कोही मद्दतगार आउन सक्ने छैन ।

إِلَّا رَحْمَةً مِّن رَّبِّكَ ۚ إِنَّ فَضْلَهُ كَانَ عَلَيْكَ كَبِيرًا ﴿٨٧﴾

८७) तपाईको पालनकर्ताको दया मात्र हो । निःसन्देह तपाईमाथि उसको ठूलो कृपा छ ।

قُل لَّئِنِ اجْتَمَعَتِ الْإِنسُ وَالْجِنُّ عَلَىٰ أَن يَأْتُوا بِمِثْلِ هَٰذَا الْقُرْآنِ لَا يَأْتُونَ بِمِثْلِهِ وَلَوْ كَانَ بَعْضُهُمْ لِبَعْضٍ ظَهِيرًا ﴿٨٨﴾

८८) भनिदिनुस् कि यदि सबै मानिसहरू र सबै जिन्नहरू मिलेर यस कुरआन जस्तो ल्याउन चाहे पनि यस कुरआन जस्तो बनाई ल्याउन असम्भव छ । यद्यपि तिनीहरू एक अर्काको मद्दतगार किन नबनुन् ।

وَلَقَدْ صَرَّفْنَا لِلنَّاسِ فِي هَٰذَا الْقُرْآنِ مِن كُلِّ مَثَلٍ فَأَبَىٰ أَكْثَرُ النَّاسِ إِلَّا كُفُورًا ﴿٨٩﴾

८९) हामीले त यस कुरआनमा मानिसहरूलाई बुभ्नुकोलागि सबै कुराहरू विभिन्न तरिकाले वर्णन गरिदिएका छौं, तर अधिकांश मानिसहरूले इन्कार गर्न छाड्दैनन् ।

وَقَالُوا لَن نُّؤْمِنَ لَكَ حَتَّىٰ تَفْجُرَ لَنَا مِنَ الْأَرْضِ يَنبُوعًا ﴿٩٠﴾

९०) उनीहरूले भन्नथाले कि हामीले तपाईमाथि ईमान ल्याउने छैनौं जबसम्म कि हाम्रा निम्ति तपाईले धर्तीबाट पानीको मुहान खोलि दिनु हुन्न ।

أَوْ تَكُونَ لَكَ جَنَّةٌ مِّن نَّخِيلٍ وَعِنَبٍ فَتُفَجِّرَ الْأَنْهَارَ خِلَالَهَا تَفْجِيرًا ﴿٩١﴾

९१) अथवा तपाईको लागि खजूरहरू र अंगूहरूका कुनै बगैंचा होस् र त्यसको मध्यमा तपाईले नहरहरू निकालिदिनुस् ।

أَوْ تُسْقِطَ السَّمَاءَ كَمَا زَعَمْتَ عَلَيْنَا كِسَفًا أَوْ تَأْتِيَ بِاللَّهِ وَالْمَلَائِكَةِ قَبِيلًا ﴿٩٢﴾

९२) वा जस्तो कि तपाईले भन्ने गर्दछौ हामी माथि स्वयम् आकाशका टुक्रा टुक्रा गरी खसालिदिनुस् वा अल्लाह र फरिश्ताहरूलाई तपाईले हाम्रा सामु ल्याएर उभ्याई दिनुस् ।

أَوْ يَكُونَ لَكَ بَيْتٌ مِّن زُخْرُفٍ أَوْ تَرْقَىٰ فِي السَّمَاءِ ۚ وَلَن نُّؤْمِنَ لِرُقِيِّكَ حَتَّىٰ تُنَزِّلَ عَلَيْنَا كِتَابًا نَّقْرَؤُهُ ۗ قُلْ سُبْحَانَ رَبِّي هَلْ كُنتُ إِلَّا بَشَرًا رَّسُولًا ﴿٩٣﴾

९३) वा तपाईंको लागि कुनै सुनको घर होस् वा तपाईं आकशमाथि चढिहाल्नुस् र हामीले चढ्ने कुरोलाई पनि तब सम्म मान्ने छैनौं, जबसम्म कि तपाईंले हाम्रो लागि कुनै किताब ल्याउँदैनौं जसलाई हामीले पढ्न सकौं । तपाई भनीदिनुस् कि मेरो पालनकर्ता पवित्र छ मत मात्र एउटा मानिस हूँ जसलाई रसूल बनाइएको छ ।

وَمَا مَنَعَ النَّاسَ أَن يُؤْمِنُوا إِذْ جَاءَهُمُ الْهُدَىٰ إِلَّا أَن قَالُوا أَبَعَثَ اللَّهُ بَشَرًا رَّسُولًا ﴿٩٤﴾

९४) मानिसहरूको पासमा मार्ग निर्देशन आई पुगेपछि उनीहरूलाई ईमान ल्याउनबाट यस बाहेक अरु कुनै कुराको रुकावट भएन कि तिनीहरूले भने कि के अल्लाहले एउटा मानिसलाई नै पैगम्बर बनाएर पठाएको छ ?

قُل لَّوْ كَانَ فِي الْأَرْضِ مَلَائِكَةٌ يَمْشُونَ مُطْمَئِنِّينَ لَنَزَّلْنَا عَلَيْهِم مِّنَ السَّمَاءِ مَلَكًا رَّسُولًا ﴿٩٥﴾

९५) भनिदिनुस् कि यदि धर्तीमा फरिश्ताहरू बसोबास गरी घूम-फिर गरिराखेको भए हामीहरूले पनि तिनीहरूको पासमा एउटा फरिश्तालाई नै पैगम्बर बनाएर पठाउने थियौं ।

قُلْ كَفَىٰ بِاللَّهِ شَهِيدًا بَيْنِي وَبَيْنَكُمْ ۚ إِنَّهُ كَانَ بِعِبَادِهِ خَبِيرًا بَصِيرًا ﴿٩٦﴾

९६) भनिदिनुस् कि मेरो र तिम्रो बीचमा अल्लाह साक्षी हुनु प्रयाप्त छ ऊ आफ्ना सेवकहरू बारे राम्ररी जान्दछ र देख्नेवाला छ ।

وَمَن يَهْدِ اللَّهُ فَهُوَ الْمُهْتَدِ ۖ وَمَن يُضْلِلْ فَلَن تَجِدَ لَهُمْ أَوْلِيَاءَ مِن دُونِهِ ۖ وَنَحْشُرُهُمْ يَوْمَ الْقِيَامَةِ

९७) जुन व्यक्तिलाई अल्लाहले पथ प्रदर्शन गर्दछ उसले मार्गदर्शन प्राप्त गर्छ

عَلٰى وُجُوْهِهِمْ عُمْيًا وَّبُكْمًا وَّصُمًّا ۗ مَاْوٰىهُمْ جَهَنَّمُ ۗ
كُلَّمَا خَبَتْ زِدْنٰهُمْ سَعِيْرًا ﴿٩٧﴾

र जसलाई मार्गविचलित गर्दछ, तपाईले अल्लाह बाहेक अरु कोही उसको मित्र पाउने छैनौं र हामीले त्यस्ता मानिसहरूलाई कियामतका दिन घोप्टेको अवस्थामा अन्धो, लाटो र बहिरो बनाएर एकत्रित गर्ने छौं । र तिनीहरूको बासस्थल नर्क हुनेछ । जब त्यसको निभ्ने अवस्था हुन्छ त हामीले त्यसलाई अरु प्रज्वलित गरिदिने छौं ।

ذٰلِكَ جَزَآؤُهُمْ بِاَنَّهُمْ كَفَرُوْا بِاٰيٰتِنَا وَقَالُوْٓا ءَاِذَا
كُنَّا عِظَامًا وَّرُفَاتًا ءَاِنَّا لَمَبْعُوْثُوْنَ خَلْقًا
جَدِيْدًا ﴿٩٨﴾

९८) यो सब तिनीहरूको सजाय हो । यस कारणले कि तिनीहरूले हाम्रो आयातहरूलाई नकार्दथे र भन्दथेः कि जब हामी (मरेर कुहेका) हड्डीहरू टुक्रा-टुक्रा भइहाल्छौं भने त के फेरि हामीलाई नयाँ जन्ममा उठाएर उभ्याइने छ ?

اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ
قَادِرٌ عَلٰٓى اَنْ يَّخْلُقَ مِثْلَهُمْ وَجَعَلَ لَهُمْ اَجَلًا
لَّا رَيْبَ فِيْهِ ۗ فَاَبَى الظّٰلِمُوْنَ اِلَّا كُفُوْرًا ﴿٩٩﴾

९९) के तिनीहरूले देखेनन्, कि अल्लाह जसले आकाशहरू र धर्तीको सृष्टि गरेको छ, ऊ यस कुरामा सक्षम छ कि तिनीहरू जस्ता मानिसहरू सृष्टि गर्न सकोस् ? र उसैले तिनीहरूका निम्ति एक यस्तो समय निर्धारित गरिदिएको छ, जसमा कुनै पनि सन्देह छैन । तर अत्याचारीहरूले इन्कार नगरी रहन सक्तैनन् ।

قُلْ لَّوْ اَنْتُمْ تَمْلِكُوْنَ خَزَآئِنَ رَحْمَةِ رَبِّيْٓ اِذًا
لَّاَمْسَكْتُمْ خَشْيَةَ الْاِنْفَاقِ ۗ وَكَانَ الْاِنْسَانُ
قَتُوْرًا ﴿١٠٠﴾

१००) भनिदिनुस् कि यदि मेरो पालनकर्ताको दयाका खजानाहरू तिम्रा हातमा भएको भए, त्यस बेला पनि तिमीले

खर्च हुने डरले त्यसलाई रोकेर राख्थ्यौ र मानिसको हृदय हुन्छ नै ज्यादै संकुचित ।

وَلَقَدْ آتَيْنَا مُوسَىٰ تِسْعَ آيَاتٍ بَيِّنَاتٍ ۖ فَاسْأَلْ بَنِي إِسْرَائِيلَ إِذْ جَاءَهُمْ فَقَالَ لَهُ فِرْعَوْنُ إِنِّي لَأَظُنُّكَ يَا مُوسَىٰ مَسْحُورًا ﴿١٠١﴾

१०१) हामीले मूसालाई नौ वटा स्पष्ट चमत्कारहरू प्रदान गर्‍यौं, तिमी स्वयम् बनी इस्राईलसित सोध कि, जब उनी तिनीहरूको समक्ष आए त फिरऔनले उनीसित भन्यो कि हे मूसा मलाई लाग्छ कि, तिमी माथि ठूला जादू गरिएको छ ।

قَالَ لَقَدْ عَلِمْتَ مَا أَنْزَلَ هَٰؤُلَاءِ إِلَّا رَبُّ السَّمَاوَاتِ وَالْأَرْضِ بَصَائِرَ وَإِنِّي لَأَظُنُّكَ يَا فِرْعَوْنُ مَثْبُورًا ﴿١٠٢﴾

१०२) मूसाले भनेः कि यो त तिमीलाई थाहा भइसकेको छ कि आकाश र धर्तीको पालनकर्ताले नै तिमीहरूलाई देखाउन र सम्झाउनको निम्ति उतारेको छ र हे फिरऔन म ठान्दछु कि निःसन्देह तिमी नष्ट भइहाल्नेछौ ।

فَأَرَادَ أَنْ يَسْتَفِزَّهُمْ مِنَ الْأَرْضِ فَأَغْرَقْنَاهُ وَمَنْ مَعَهُ جَمِيعًا ﴿١٠٣﴾

१०३) तब फिरऔनले पक्का पक्की नीयत गर्‍यो कि उनलाई (मिस्रको) भूमिबाट निष्कासन गरिदेओस्, त हामीले उसलाई र उसको सबै साथीलाई डुबाइदियौं ।

وَقُلْنَا مِنْ بَعْدِهِ لِبَنِي إِسْرَائِيلَ اسْكُنُوا الْأَرْضَ فَإِذَا جَاءَ وَعْدُ الْآخِرَةِ جِئْنَا بِكُمْ لَفِيفًا ﴿١٠٤﴾

१०४) यसपछि हामीले बनी इस्राईलसँग भन्यौं कि तिमी यस मुलुकमा बसोबास गर अनि जब आखिरतको वचन आउँछ, तब हामीले तिमी सबैलाई समेटेर एकत्रित गरिहाल्नेछौं ।

وَبِالْحَقِّ أَنْزَلْنَاهُ وَبِالْحَقِّ نَزَلَ ۗ وَمَا أَرْسَلْنَاكَ إِلَّا مُبَشِّرًا وَنَذِيرًا ﴿١٠٥﴾

१०५) र हामीले यस कुरआनलाई सत्यताका साथ उतारेका छौं र यो सत्यताका

साथ अवतारित भयो । (हे मुहम्मद) हामीले तपाईलाई मात्र शुभसन्देश दिनेवाला र डर सुनाउनेवाला बनाएर पठाएका छौं ।

१०६) हामीले कुरआनलाई टुक्राटुक्रामा गरी यसकारण पठाएका छौं, ताकि तपाईले मानिसहरूलाई फुर्सदका साथ पढेर सुनाउनुस् र हामीले यसलाई चरणबद्ध रूपमा उतारेका छौं ।

وَقُرْءَانًا فَرَقْنَٰهُ لِتَقْرَأَهُۥ عَلَى ٱلنَّاسِ عَلَىٰ مُكْثٍ وَنَزَّلْنَٰهُ تَنزِيلًا ١٠٦

१०७) भनिदिनुस् कि तिमीहरूले यसमाथि ईमान ल्याउ वा नल्याउ जुन मानिसहरूलाई यसभन्दा अगाडि जानकारी प्रदान गरिएको छ, उनी समक्ष जब यो पढेर सुनाइन्छ, तब तिनीहरू चिउडोको बलले घोप्टो परी सिज्दामा झुकि हाल्छन् ।

قُلْ ءَامِنُوا۟ بِهِۦٓ أَوْ لَا تُؤْمِنُوٓا۟ ۚ إِنَّ ٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ مِن قَبْلِهِۦٓ إِذَا يُتْلَىٰ عَلَيْهِمْ يَخِرُّونَ لِلْأَذْقَانِ سُجَّدًا ١٠٧

१०८) र भन्दछन्: कि हाम्रो पालनकर्ता पवित्र छ । निःसन्देह हाम्रो पालनकर्ताको वाचा पुरा भएरै छाड्यो ।

وَيَقُولُونَ سُبْحَٰنَ رَبِّنَآ إِن كَانَ وَعْدُ رَبِّنَا لَمَفْعُولًا ١٠٨

१०९) तिनीहरू चिउडोको बलले घोप्टो परेर रुँदै सिज्दामा जान्छन् र यस कुरआनले उनीहरूको व्याकुलता नम्रता र शीलता बढाई दिन्छ ।

وَيَخِرُّونَ لِلْأَذْقَانِ يَبْكُونَ وَيَزِيدُهُمْ خُشُوعًا ۩ ١٠٩

११०) भनिदिनुस् कि तिमीले उसलाई अल्लाहको नामले पुकार वा रहमान भनेर । जुन नामले पुकारे पनि सबै राम्रा नामहरू उसैका लागि छन्, र

قُلِ ٱدْعُوا۟ ٱللَّهَ أَوِ ٱدْعُوا۟ ٱلرَّحْمَٰنَ ۖ أَيًّا مَّا تَدْعُوا۟ فَلَهُ ٱلْأَسْمَآءُ ٱلْحُسْنَىٰ ۚ وَلَا تَجْهَرْ بِصَلَاتِكَ وَلَا تُخَافِتْ بِهَا وَٱبْتَغِ بَيْنَ ذَٰلِكَ سَبِيلًا ١١٠

नमाज़ न चर्को स्वरले पढ् र न धेरै मधुरो आवाजमा पढ बरु त्यसको बीचको तरीका अपनाऊ ।

१११) र यो भनिदिनुस् कि सबै प्रशंसा अल्लाह कै लागि हुन् । जसको न कुनै सन्तान छ र न त उसको सत्तामा कोही साभ्फेदार छ, र न ऊ कमजोर छ, कि कसैले उसलाई सहयोग गरोस्, र तिमीहरूले उसको पूरापूर महानताको वर्णन गर्ने गर ।

وَقُلِ الْحَمْدُ لِلّٰهِ الَّذِیْ لَمْ یَتَّخِذْ وَلَدًا وَّلَمْ یَكُنْ لَّهٗ شَرِیْكٌ فِی الْمُلْكِ وَلَمْ یَكُنْ لَّهٗ وَلِیٌّ مِّنَ الذُّلِّ وَكَبِّرْهُ تَكْبِیْرًا ﴿۱۱۱﴾



# सूरतुल् कहफ-१८




सूरतुल् कहफ मक्की हो । यसमा ११० आयत र १२ रुकूअ्हरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम: بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْٓ اَنْزَلَ عَلٰى عَبْدِهِ الْكِتٰبَ وَلَمْ يَجْعَلْ لَّهٗ عِوَجًا ۜ ①

१) सबै प्रशंसाहरू अल्लाहका लागि नै छन्, जसले आफ्ना भक्त (मुहम्मद) माथि किताब उतार्‍यो र यसमा कुनै प्रकारको कमि बाँकी राखेको छैन ।

قَيِّمًا لِّيُنْذِرَ بَأْسًا شَدِيْدًا مِّنْ لَّدُنْهُ وَيُبَشِّرَ الْمُؤْمِنِيْنَ الَّذِيْنَ يَعْمَلُوْنَ الصّٰلِحٰتِ اَنَّ لَهُمْ اَجْرًا حَسَنًا ۙ ②

२) अपितु हर प्रकारले ठीक ठाक राख्यो जसबाट आफनो तर्फको गम्भीर सजायबाट सावधान गरोस् र मोमिनहरूलाई जो असल काम गर्दछन्, शुभसन्देश सुनाओस्, कि तिनीहरूको निम्ति राम्रो पुरस्कार (बहिश्त) छ ।

مّٰكِثِيْنَ فِيْهِ اَبَدًا ۙ ③

३) जसमा तिनीहरू सँधै बास गर्नेछन् ।

وَّيُنْذِرَ الَّذِيْنَ قَالُوا اتَّخَذَ اللّٰهُ وَلَدًا ۙ ④

४) र तिनीहरूलाई पनि डराओस् जसले भन्दछन् कि अल्लाहले सन्तान धारण गरेको छ ।

مَا لَهُمْ بِهٖ مِنْ عِلْمٍ وَّلَا لِاٰبَآئِهِمْ ۭ كَبُرَتْ كَلِمَةً تَخْرُجُ مِنْ اَفْوَاهِهِمْ ۭ اِنْ يَّقُوْلُوْنَ اِلَّا كَذِبًا ⑤

५) वास्तवमा तिनीहरूलाई यस कुराको न केही ज्ञान छ र नत तिनका बाबुबाजेलाई नै थाहा थियो यो साह्रै नराम्रो आरोप हो, जुन उनीहरूको मुखबाट निस्कन्छ र यिनीहरूले जे जति भन्दछन्, मात्र असत्य हो ।

६) (हे पैगम्बर !) यदि यिनीहरूले यस सन्देश माथि विश्वास गर्दैनन् भने के तपाई उनीहरूको पछाडि दु:खी भई शायद आफूलाई समाप्त गरिहाल्ने छौ ?

فَلَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ عَلٰٓى اٰثَارِهِمْ اِنْ لَّمْ يُؤْمِنُوْا بِهٰذَا الْحَدِيْثِ اَسَفًا ۝٦

७) जुन कुरो धर्तीमा छ, हामीले त्यसलाई धर्तीको निम्ति शोभाको कुरो बनाएका छौं, ताकि मानिसहरूको परीक्षा गर्न सकौं, कि तिनीहरूमध्ये को राम्रो कर्म गर्नेवाला छ ।

اِنَّا جَعَلْنَا مَا عَلَى الْاَرْضِ زِيْنَةً لَّهَا لِنَبْلُوَهُمْ اَيُّهُمْ اَحْسَنُ عَمَلًا ۝٧

८) र यसमाथि जो जति छ हामीले उनीलाई सफा गरी मैदान बनाउने वाला छौं ।

وَاِنَّا لَجٰعِلُوْنَ مَا عَلَيْهَا صَعِيْدًا جُرُزًا ۝٨

९) के तिमीले ठान्दछौ कि गुफा र शिलालेखहरू हाम्रा ठूला निशानीहरू मध्ये कुनै धेरै अनौठा निशानी थियो ? ।

اَمْ حَسِبْتَ اَنَّ اَصْحٰبَ الْكَهْفِ وَالرَّقِيْمِ كَانُوْا مِنْ اٰيٰتِنَا عَجَبًا ۝٩

१०) जब केही युवकहरूले गुफामा शरण लिए अनि प्रार्थना गर्न थाले: कि हे हाम्रा पालनकर्ता हामीमाथि आफ्नो तर्फबाट दया गर, र हाम्रो काममा हाम्रो लागि बाटो देखाई देऊ ।

اِذْ اَوَى الْفِتْيَةُ اِلَى الْكَهْفِ فَقَالُوْا رَبَّنَآ اٰتِنَا مِنْ لَّدُنْكَ رَحْمَةً وَّهَيِّئْ لَنَا مِنْ اَمْرِنَا رَشَدًا ۝١٠

११) अनि हामीले गुफामा कैयौं वर्षसम्म तिनीहरूका कानमाथि आवरणहरूले (सुनाईबाट) बन्चित राख्यौं ।

فَضَرَبْنَا عَلٰٓى اٰذَانِهِمْ فِى الْكَهْفِ سِنِيْنَ عَدَدًا ۝١١

१२) अनि हामीले तिनीहरूलाई बिउँझायौं ताकि पत्ता लगाऔं जुन अवधिमा

ثُمَّ بَعَثْنٰهُمْ لِنَعْلَمَ اَيُّ الْحِزْبَيْنِ اَحْصٰى لِمَا لَبِثُوْٓا اَمَدًا ۝١٢

उनीहरू गुफामा रहे दुवै समूहहरूमध्ये त्यस अवधि बारे कसलाई राम्ररी थाहा छ ?

نَحۡنُ نَقُصُّ عَلَيۡكَ نَبَاَهُمۡ بِالۡحَقِّ ؕ اِنَّهُمۡ فِتۡيَةٌ اٰمَنُوۡا بِرَبِّهِمۡ وَزِدۡنٰهُمۡ هُدًى ﴿ۖ ۱۳﴾

१३) हामीले तिनीहरूको सत्य घटना को वर्णन तिमीहरू समक्ष गर्दछौं । यी गिन्तीका केही युवकहरूले आफ्नो पालनकर्तामाथि ईमान ल्याएका थिए र हामीले तिनीहरूको ईमानलाई सुदृढ गरेका थियौं ।

وَّرَبَطۡنَا عَلٰى قُلُوۡبِهِمۡ اِذۡ قَامُوۡا فَقَالُوۡا رَبُّنَا رَبُّ السَّمٰوٰتِ وَالۡاَرۡضِ لَنۡ نَّدۡعُوَا۟ مِنۡ دُوۡنِهٖۤ اِلٰهًا لَّقَدۡ قُلۡنَاۤ اِذًا شَطَطًا ﴿۱۴﴾

१४) हामीले तिनीहरूको हृदयलाई बलियो बनायौं जब तिनीहरू उभिए र भन्न थाले: कि हाम्रो पालनकर्ता तिमी उही हौ जो आकाशहरू र धर्तीको स्वामी हौ, हामीले उस बाहेक अन्य कसैलाई पुकार्नु असंभव छ । यदि यस्तो गर्‍यौं भने हामीले धेरै गलत कुरा गर्‍यौं ।

هٰۤؤُلَاۤءِ قَوۡمُنَا اتَّخَذُوۡا مِنۡ دُوۡنِهٖۤ اٰلِهَةً ؕ لَوۡلَا يَاۡتُوۡنَ عَلَيۡهِمۡ بِسُلۡطٰنٍۭ بَيِّنٍ ؕ فَمَنۡ اَظۡلَمُ مِمَّنِ افۡتَرٰى عَلَى اللّٰهِ كَذِبًا ؕ ﴿۱۵﴾

१५) यी हो हाम्रो समुदाय जसले उस बाहेक अरुलाई पूजायोग्य बनाएका छन्, यिनीहरूले तिनीहरू पूजनीय भएको कुनै स्पष्ट प्रमाण किन पेश गर्दैनन्, त्यसभन्दा अत्याचारी को होला जो अल्लाह माथि झूठो कुरा गर्दछ ?

وَاِذِ اعۡتَزَلۡتُمُوۡهُمۡ وَمَا يَعۡبُدُوۡنَ اِلَّا اللّٰهَ فَاۡوٗۤا اِلَى الۡكَهۡفِ يَنۡشُرۡ لَكُمۡ رَبُّكُمۡ مِّنۡ رَّحۡمَتِهٖ وَيُهَيِّئۡ لَكُمۡ مِّنۡ اَمۡرِكُمۡ مِّرۡفَقًا ﴿۱۶﴾

१६) जब तिमी यीनीहरूसँग र जसलाई यिनीहरूले अल्लाह बाहेक पूज्य मान्दछन्, तिनीहरूसँग कुनै सम्बन्ध राख्दैनौं भने आफू कुनै गुफामा गएर बस । तिम्रो पालनकर्ताले तिमी

माथि प्रशस्त दया गर्नेछ र तिम्रो लागि तिम्रो काममा सहुलियत उपलब्ध गर्नेछ ।

१७) तपाईले हेर्नु हुनेछ कि सूर्य उदाउने बेला तिनीहरूको गुफादेखि दाहिनेतिर झुकिन्छ, र जब अस्ताउँछ तब तिनीहरूबाट देब्रेतिर झुकिन्छ, र तिनीहरू यस गुफाको विस्तृत ठाउँमा थिए । यो अल्लाहका निशानीहरू मध्येको हो, जसलाई अल्लाहले मार्ग निर्देशन गऱ्यो, ऊ सही मार्गमा लाग्यो र जसलाई उसले विचलित गऱ्यो, त उसको निम्ति तपाईले न कोही पथ प्रदर्शक र न कोही मित्र पाउने छौ ।

وَتَرَى الشَّمْسَ إِذَا طَلَعَتْ تَّزٰوَرُ عَنْ كَهْفِهِمْ
ذَاتَ الْيَمِيْنِ وَإِذَا غَرَبَتْ تَّقْرِضُهُمْ ذَاتَ الشِّمَالِ
وَهُمْ فِيْ فَجْوَةٍ مِّنْهُ ۚ ذٰلِكَ مِنْ اٰيٰتِ اللّٰهِ ۗ مَنْ
يَّهْدِ اللّٰهُ فَهُوَ الْمُهْتَدِ ۚ وَمَنْ يُّضْلِلْ فَلَنْ تَجِدَ لَهٗ
وَلِيًّا مُّرْشِدًا ۝١٧

१८) तपाई ठान्नु हुन्छ कि तिनीहरू बिउँझिराखेका छन्, तर तिनीहरू निदाइराखेका हुन्थे स्वयम् हामीले तिनीहरूलाई दायाँ र बाँया कोल्टे फर्काउने गर्दथ्यौं र तिनीहरूको "कुकुर" पनि दैलोमा अगाडिको खुट्टा फैलाएर बसेको थियो यदि तपाईले तिनीहरूलाई चियाएर हेरेको भए पिठ्यू फर्काएर भाग्नु पर्थ्यो र तिनीहरूको डरले तपाईमा भयको सृजना हुने थियो ।

وَتَحْسَبُهُمْ اَيْقَاظًا وَّهُمْ رُقُوْدٌ ۖ وَّنُقَلِّبُهُمْ ذَاتَ
الْيَمِيْنِ وَذَاتَ الشِّمَالِ ۖ وَكَلْبُهُمْ بَاسِطٌ
ذِرَاعَيْهِ بِالْوَصِيْدِ ۗ لَوِ اطَّلَعْتَ عَلَيْهِمْ لَوَلَّيْتَ مِنْهُمْ
فِرَارًا وَّلَمُلِئْتَ مِنْهُمْ رُعْبًا ۝١٨

१९) र यस्तै प्रकारले हामीले तिनीहरूलाई ब्यूँझाएर उठायौं कि आपसमा एक अर्कासँग पूछ-ताछ गरुन् । तिनीहरू

وَكَذٰلِكَ بَعَثْنٰهُمْ لِيَتَسَآءَلُوْا بَيْنَهُمْ ۗ قَالَ قَآئِلٌ
مِّنْهُمْ كَمْ لَبِثْتُمْ ۗ قَالُوْا لَبِثْنَا يَوْمًا اَوْ بَعْضَ
يَوْمٍ ۗ قَالُوْا رَبُّكُمْ اَعْلَمُ بِمَا لَبِثْتُمْ ۗ فَابْعَثُوْٓا

أَحَدَكُم بِوَرِقِكُمْ هَٰذِهِ إِلَى الْمَدِينَةِ فَلْيَنظُرْ أَيُّهَا أَزْكَىٰ طَعَامًا فَلْيَأْتِكُم بِرِزْقٍ مِّنْهُ وَلْيَتَلَطَّفْ وَلَا يُشْعِرَنَّ بِكُمْ أَحَدًا ⑲

मध्ये एउटाले भन्यो कि तिमी यहाँ कति बेरसम्म बस्यौ ? तिनीहरूले जवाफ दिए कि एकदिन वा यसभन्दा पनि कम तिनीहरूले भने कि जुन अवधिसम्म तिमी यहाँ बस्यो त्यो तिम्रो पालनकर्तालाई नै राम्ररी थाहा छ । अब तिमीले आफू मध्ये कसैलाई यो चाँदीको रूपैयाँ दिएर शहर पठाऊ, उसले राम्रो सँग पत्ता लगाओस्, कि शहरमा पवित्र र राम्रो खाना कुन चाहिँ छ, अनि त्यसै मध्येबाट तिम्रो लागि खाना ल्याओस् र उसले धेरै सतर्क भएर आउने जाने गरोस् र तिम्रो खबर कसैलाई थाहा नहोस् ।

إِنَّهُمْ إِن يَظْهَرُوا عَلَيْكُمْ يَرْجُمُوكُمْ أَوْ يُعِيدُوكُمْ فِي مِلَّتِهِمْ وَلَن تُفْلِحُوا إِذًا أَبَدًا ⑳

२०) यदि यी काफिरहरू तिमीमाथि अधिपत्य पाउँछन् भने तिमीलाई ढुङ्गा हानि-हानि मारिहाल्नेछन् अथवा फेरि आफ्नो धर्ममा शम्मिलित गरिहाल्नेछन्, र त्यस अवस्थामा तिमी कहिल्यै पनि सफलता पाउनेछैनौ ।

وَكَذَٰلِكَ أَعْثَرْنَا عَلَيْهِمْ لِيَعْلَمُوا أَنَّ وَعْدَ اللَّهِ حَقٌّ وَأَنَّ السَّاعَةَ لَا رَيْبَ فِيهَا إِذْ يَتَنَازَعُونَ بَيْنَهُمْ أَمْرَهُمْ فَقَالُوا ابْنُوا عَلَيْهِم بُنْيَانًا رَّبُّهُمْ أَعْلَمُ بِهِمْ قَالَ الَّذِينَ غَلَبُوا عَلَىٰ أَمْرِهِمْ لَنَتَّخِذَنَّ عَلَيْهِم مَّسْجِدًا ㉑

२१) यस्तै किसिमले हामीले मानिसहरूलाई तिनीहरूको हालबाट खबरदार गरेका छौं ताकि तिनीहरूले थाहा पाउन्, कि अल्लाहको वचन पूरै सत्य छ, र क़ियामतको दिनमा कुनै शंका छैन, त्यसबेला जब मानिसहरूले तिनको सम्बन्धमा आपसमा विवाद

गरिरहेका थिए त केहीले, भन्न थाले कि तिनीहरूको गुफा माथि एउटा भवन बनाइहाल । तिनीहरूको पालनकर्ता नै तिनीहरूको हाल राम्ररी जान्दछ । जुन मानिसहरूले तिनीहरू माथि वर्चस्व पाए, भन्न थाले कि हामीले तिनीहरूको स्थानमाथि मस्जिदको निर्माण गर्नेछौं ।

सَيَقُوْلُوْنَ ثَلٰثَةٌ رَّابِعُهُمْ كَلْبُهُمْ ۚ وَيَقُوْلُوْنَ خَمْسَةٌ سَادِسُهُمْ كَلْبُهُمْ رَجْمًا بِالْغَيْبِ ۚ وَيَقُوْلُوْنَ سَبْعَةٌ وَّثَامِنُهُمْ كَلْبُهُمْ ۚ قُلْ رَّبِّيْۤ اَعْلَمُ بِعِدَّتِهِمْ مَّا يَعْلَمُهُمْ اِلَّا قَلِيْلٌ ۬ۥ فَلَا تُمَارِ فِيْهِمْ اِلَّا مِرَآءً ظَاهِرًا ۠ وَّلَا تَسْتَفْتِ فِيْهِمْ مِّنْهُمْ اَحَدًا ﴿۲۲﴾

२२) केही मानिसहरूले अड्कलबाजि गर्नेछन् कि तिनीहरू तीन थिए र चौथो तिनीहरूको कुकुर थियो, र केहिले भन्नेछन् कि तिनीहरू पाँच थिए र छैठो उनको कुकुर थियो । गोप्य कुरामा यो अड्कलबाजी गर्दछन् । केहिले भन्ने छन् कि तिनीहरू सात थिए र आठौं उनको कुकुर थियो । तपाई भनिदिनुस् कि मेरो पालनकर्तालाई तिनीहरूको गन्ती राम्ररी थाहा छ । तिनीहरूलाई थोरैले मात्र जान्दछन्, तसर्थ तपाईले उनीहरूको सम्बन्धमा जुन स्पष्ट छ त्यो कुरोबाहेक अरु कुनैतर्क न गर्नुस् र तिनीहरूको सम्बन्धमा तिनीहरू मध्ये कसैसँग केही सोधपूछ नगर्नुस् ।

وَلَا تَقُوْلَنَّ لِشَايْءٍ اِنِّيْ فَاعِلٌ ذٰلِكَ غَدًا ﴿۲۳﴾

२३) र कुनै कामको बारेमा यो कदापि नभन्नु: कि म यसलाई भोलि गरिदिनेछु ।

اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ ۫ وَاذْكُرْ رَّبَّكَ اِذَا نَسِيْتَ

२४) तर इन्शा अल्लाह भनेर मात्र, (यदि

وَقُلْ عَسَىٰٓ أَن يَهْدِيَنِ رَبِّي لِأَقْرَبَ مِنْ هَٰذَا رَشَدًا ﴿٢٤﴾

अल्लाहले चाह्यो भने गरिदिनेछु) । र जब अल्लाहको नाम लिन बिर्सन्छौ भने याद आएपछि नाम लिई हाल, र भन्दै गर कि आशा छ कि मेरो पालनकर्ताले मलाई यसभन्दा पनि बढी मार्ग निर्देशन गर्नेछ ।

وَلَبِثُوا فِي كَهْفِهِمْ ثَلَٰثَ مِائَةٍ سِنِينَ وَازْدَادُوا تِسْعًا ﴿٢٥﴾

२५) तिनीहरूले आफ्नो गुफामा तीनसय वर्ष रहे र त्यसमा नौ वर्ष बृद्धि गरे ।

قُلِ اللَّهُ أَعْلَمُ بِمَا لَبِثُوا ۖ لَهُ غَيْبُ السَّمَٰوَٰتِ وَالْأَرْضِ ۖ أَبْصِرْ بِهِ وَأَسْمِعْ ۚ مَا لَهُم مِّن دُونِهِ مِن وَلِيٍّ وَلَا يُشْرِكُ فِي حُكْمِهِ أَحَدًا ﴿٢٦﴾

२६) तपाई भनिदिनुस् कि जुन अवधिसम्म तिनीहरू बसे त्यसलाई अल्लाह राम्ररी जान्दछ । उसैलाई आकाशहरू र जमिनका अदृश्य कुराहरू थाहा छ । ऊ कति राम्रो देख्नेवाला र कति राम्रो सुन्नेवाला छ । अल्लाह बाहेक तिनीहरूको अन्य कोही मद्दत गर्नेवाला छैन, अल्लाह आफ्नो निर्देशनमा अन्य कसैलाई भागीदार बनाउँदैन ।

وَاتْلُ مَا أُوحِيَ إِلَيْكَ مِن كِتَابِ رَبِّكَ ۖ لَا مُبَدِّلَ لِكَلِمَٰتِهِ وَلَن تَجِدَ مِن دُونِهِ مُلْتَحَدًا ﴿٢٧﴾

२७) तिमीहरू तर्फ जुन तिम्रो पालनकर्ताको किताब पठाइएको छ त्यसलाई पढ्ने गर, त्यसको कुरालाई कसैले परिवर्तन गर्न सक्दैन, र त्यस बाहेक तिमीले कदापि अरु केही शरण लिने ठाउँ पाउनेछैनौ ।

وَاصْبِرْ نَفْسَكَ مَعَ الَّذِينَ يَدْعُونَ رَبَّهُم بِالْغَدَوٰةِ وَالْعَشِيِّ يُرِيدُونَ وَجْهَهُ ۖ وَلَا تَعْدُ عَيْنَاكَ عَنْهُمْ تُرِيدُ زِينَةَ الْحَيَوٰةِ الدُّنْيَا ۖ وَلَا تُطِعْ مَنْ أَغْفَلْنَا قَلْبَهُ عَن ذِكْرِنَا وَاتَّبَعَ هَوَىٰهُ وَكَانَ أَمْرُهُ فُرُطًا ﴿٢٨﴾

२८) र जुन मानिसहरूले विहान र साँझ आफ्ना पालनकर्तालाई पुकार्दछन् र उसैको प्रसन्नता चाहन्छन् तिनीहरूको साथमा, आफूलाई राख्ने गर खबरदार तिम्रा आँखाहरू

तिनीहरूबाट अन्यत्र नजाउन्, ताकि संसारिक जीवनको वैभवको इच्छा गर्न थाल, र हेर जुन मानिसको हृदयलाई हामीले आफ्नो स्मरणबाट बेवास्ता गरिदिएका छौं, र त्यो आफ्नो इच्छाको पूर्तितिर लाग्छ, र त्यसको कामले सीमा नाघिसकेको छ, त्यसको भनाई नमान्नु ।

२९) र घोषणा गर्नुस् कि यो कुरआन तिम्रो पालनकर्ताको तर्फबाट सम्पूर्ण सत्य छ, तसर्थ जसले चाहन्छ ईमान ल्याओस् र जो चाहन्छ काफिर रहोस् हामीले अत्याचारीहरूको निम्ति (नर्कको) त्यो आगो तयार गरेका छौं, जसको पर्खाल र ज्वालाहरूले त्यसलाई घेरिराख्ने छन् । र यदि तिनीहरूले मद्दतको याचना गर्नेछन् भने यस्तो पानीबाट मद्दत गरिनेछ जुन कि उम्लेको तेल जस्तै अति गरम हुनेछ, र जसले अनुहारलाई पोलिदिनेछ । त्यो अत्यन्त नराम्रो पानी र अत्यन्त नराम्रा बस्ने ठाउँ पनि हो ।

وَقُلِ الْحَقُّ مِنْ رَّبِّكُمْ فَمَنْ شَآءَ فَلْيُؤْمِنْ
وَّمَنْ شَآءَ فَلْيَكْفُرْ ۚ اِنَّآ اَعْتَدْنَا
لِلظّٰلِمِيْنَ نَارًا اَحَاطَ بِهِمْ سُرَادِقُهَا ؕ وَاِنْ
يَّسْتَغِيْثُوْا يُغَاثُوْا بِمَآءٍ كَالْمُهْلِ يَشْوِى
الْوُجُوْهَ ؕ بِئْسَ الشَّرَابُ ؕ وَسَآءَتْ مُرْتَفَقًا ﴿٢٩﴾

३०) निश्चितरूपले जसले ईमान ल्याए र असल कर्म पनि गरे, भने हामीले सत्कर्म गर्नेहरूको पुरस्कार खेर जान दिंदैनौं ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ اِنَّا لَا نُضِيْعُ
اَجْرَ مَنْ اَحْسَنَ عَمَلًا ۚ ﴿٣٠﴾

३१) यस्ता मानिसहरूको निम्ति सधैं बास गर्नको लागि स्वर्गका बगैंचा छन्,

اُولٰٓئِكَ لَهُمْ جَنّٰتُ عَدْنٍ تَجْرِىْ مِنْ تَحْتِهِمُ
الْاَنْهٰرُ يُحَلَّوْنَ فِيْهَا مِنْ اَسَاوِرَ مِنْ ذَهَبٍ

وَّيَلْبَسُوْنَ ثِيَابًا خُضْرًا مِّنْ سُنْدُسٍ وَّاِسْتَبْرَقٍ مُّتَّكِـِٕيْنَ فِيْهَا عَلَى الْاَرَاۗىِٕكِ ۭ نِعْمَ الثَّوَابُ ۭ وَحَسُنَتْ مُرْتَفَقًا ۝٣١

जसमा तिनीहरूको मुनि नहरहरू बगिरहने छन् । तिनीहरूलाई त्यहाँ सुनका कंगन पहिराइनेछ । र तिनीहरूले राम्रो रेशमका बाक्लो हरिया लुगा लगाउनेछन् । त्यहाँ आसनहरू माथि तकिया लगाएर बस्नेछन् । आहा कति राम्रो पुरस्कार छ र कति राम्रो बासस्थान छ ।

وَاضْرِبْ لَهُمْ مَّثَلًا رَّجُلَيْنِ جَعَلْنَا لِاَحَدِهِمَا جَنَّتَيْنِ مِنْ اَعْنَابٍ وَّحَفَفْنٰهُمَا بِنَخْلٍ وَّجَعَلْنَا بَيْنَهُمَا زَرْعًا ۝٣٢

३२) र तिनीहरूलाई ती दुईजना मानिसहरूको कथा पनि सुनाई दिनुस्, जसमध्ये एउटालाई हामीले अंगूरका दुईटा बगैंचा प्रदान गरेका थियौं र तिनीहरूका चारैतिर हामीले खजूरका रुखहरूबाट घेरी राखेका थियौं, र दुवैको माझमा खेती लगाई राखेका थियौं ।

كِلْتَا الْجَنَّتَيْنِ اٰتَتْ اُكُلَهَا وَلَمْ تَظْلِمْ مِّنْهُ شَـيْـــًٔا ۙ وَّفَجَّرْنَا خِلٰلَهُمَا نَهَرًا ۝٣٣

३३) दुवै बगैंचाले (राम्रा) फल दिए र तिनको पैदावारमा कुनै प्रकारको कमी भएन, र दुवैको माझबाट हामीले एउटा नहर बगाएका थियौं ।

وَّكَانَ لَهٗ ثَمَرٌ ۚ فَقَالَ لِصَاحِبِهٖ وَهُوَ يُحَاوِرُهٗٓ اَنَا اَكْثَرُ مِنْكَ مَالًا وَّاَعَزُّ نَفَرًا ۝٣٤

३४) (भनाईको) तात्पर्य यो छ कि तिनीहरूको पासमा मेवाहरू थिए, अनि एकदिन जबकि उसले आफ्नो मित्रसँग कुरै कुरामा, भन्न थाल्यो कि म तिमी भन्दा धेरै धनी छु, र मर्यादा र शक्तिको दृष्टिले पनि बढी छु ।

وَدَخَلَ جَنَّتَهٗ وَهُوَ ظَالِمٌ لِّنَفْسِهٖ ۚ قَالَ مَآ اَظُنُّ اَنْ تَبِيْدَ هٰذِهٖٓ اَبَدًا ۝٣٥

३५) र (घमण्डले) ऊ आफ्नो बगैँचामा गयो र आफनो हकमा अत्याचार गर्दै

भन्न थाल्यो कि मलाई लाग्दैन, कि यो बगैंचा कहिले पनि नष्ट हुनेछ ।

३६) र न यो सम्भन्छु : कि कियामत हुनेछ, र यदि म आफ्नो पालनकर्तातिर फर्काइए पनि अवश्य राम्रो ठाउँ पाउनेछु ।

وَّمَآ اَظُنُّ السَّاعَةَ قَآئِمَةً وَّلَئِنْ رُّدِدْتُّ اِلٰى رَبِّيْ لَاَجِدَنَّ خَيْرًا مِّنْهَا مُنْقَلَبًا ﴿٣٦﴾

३७) अनि उसको मित्रले उसँग कुराकानी गर्दै भन्यो कि के तिमीले उस अल्लाह सँग कुफ्र गर्दछौ, जसले तिमीलाई माटोले सृष्टि गर्यो अनि पानीको थोपाबाट, फेरि तिमीलाई पूरा मान्छे बनायो ।

قَالَ لَهٗ صَاحِبُهٗ وَهُوَ يُحَاوِرُهٗٓ اَكَفَرْتَ بِالَّذِيْ خَلَقَكَ مِنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ سَوّٰىكَ رَجُلًا ﴿٣٧﴾

३८) तर मेरो त यो आस्था छः कि उही अल्लाह नै मेरो पालनकर्ता हो र म आफ्नो पालनकर्तासँग अरु कसैलाई साझेदार ठहऱ्याउने छैन ।

لٰكِنَّا۠ هُوَ اللّٰهُ رَبِّيْ وَلَآ اُشْرِكُ بِرَبِّيْٓ اَحَدًا ﴿٣٨﴾

३९) जब तिमी आफ्नो बगैंचामा प्रवेश गऱ्यौ, त तिमीले किन भनेनौ कि अल्लाहले चाहेको हुने वाला छ (अरु) कुनै शक्ति होइन, बरु अल्लाहको मद्दतबाट, यदि तिमीले मलाई सम्पत्ति र सन्तानमा आफूभन्दा कम देखिरहेका छौ ।

وَلَوْلَآ اِذْ دَخَلْتَ جَنَّتَكَ قُلْتَ مَا شَآءَ اللّٰهُ ۙ لَا قُوَّةَ اِلَّا بِاللّٰهِ ۚ اِنْ تَرَنِ اَنَا اَقَلَّ مِنْكَ مَالًا وَّوَلَدًا ﴿٣٩﴾

४०) सम्भव छ कि मेरो पालनकर्ताले मलाई तिम्रो बगैंचा भन्दा राम्रो प्रदान गरोस् र तिम्रो बगैंचामाथि आकाशबाट प्रकोप पठाइदेओस्, अनि यो एउटा गैर आबाद मैदानको रूपमा परिणत भइहालोस् ।

فَعَسٰى رَبِّيْٓ اَنْ يُّؤْتِيَنِ خَيْرًا مِّنْ جَنَّتِكَ وَيُرْسِلَ عَلَيْهَا حُسْبَانًا مِّنَ السَّمَآءِ فَتُصْبِحَ صَعِيْدًا زَلَقًا ﴿٤٠﴾

أَوْ يُصْبِحَ مَآؤُهَا غَوْرًا فَلَنْ تَسْتَطِيعَ لَهُۥ طَلَبًا ﴿٤١﴾

४१) अथवा यसका पानी धेरै तल गइहालोस् र तिमीले त्यसलाई खोजेर ल्याउन नसक ।

وَأُحِيطَ بِثَمَرِهِۦ فَأَصْبَحَ يُقَلِّبُ كَفَّيْهِ عَلَىٰ مَآ أَنفَقَ فِيهَا وَهِيَ خَاوِيَةٌ عَلَىٰ عُرُوشِهَا وَيَقُولُ يَٰلَيْتَنِى لَمْ أُشْرِكْ بِرَبِّىٓ أَحَدًا ﴿٤٢﴾

४२) र यसका सबै फलहरूलाई (विनाशले) घेरिहाल्यो, र त्यसले जुन खर्च आफ्नो सम्पत्तिमाथि गरेको थियो, त्यसमा दुःख र अफशोचले हात मल्न थाल्यो र त्यो बगैचा त उलट पलट भइसकेको थियो र उसले भन्न थाल्यो कि काश मैले आफ्नो पालनकर्तासँग अरु कसैलाई साझेदार नठहराएको भए ।

وَلَمْ تَكُن لَّهُۥ فِئَةٌ يَنصُرُونَهُۥ مِن دُونِ ٱللَّهِ وَمَا كَانَ مُنتَصِرًا ﴿٤٣﴾

४३) (तर) अल्लाह बाहेक कुनै समूह उसको सहायता गर्ने भएन र न उसले आफ्नो उद्धार आफै गर्न सक्यो ।

هُنَالِكَ ٱلْوَلَٰيَةُ لِلَّهِ ٱلْحَقِّ ۚ هُوَ خَيْرٌ ثَوَابًا وَخَيْرٌ عُقْبًا ﴿٤٤﴾

४४) यहाँबाट प्रमाणित भयो, कि अख्तियारी सबै अल्लाहकै हो, पुरस्कार दिने सबभन्दा ठूलो उही छ र सफलता दिने सबभन्दा ठूलो पनि उही हो ।

وَٱضْرِبْ لَهُم مَّثَلَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا كَمَآءٍ أَنزَلْنَٰهُ مِنَ ٱلسَّمَآءِ فَٱخْتَلَطَ بِهِۦ نَبَاتُ ٱلْأَرْضِ فَأَصْبَحَ هَشِيمًا تَذْرُوهُ ٱلرِّيَٰحُ ۗ وَكَانَ ٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ مُّقْتَدِرًا ﴿٤٥﴾

४५) यिनीहरू समक्ष संसारको जिन्दगीको उदाहरण पनि वर्णन गर्नुस् (त्यो यस्तो छ) जस्तै पानी जसलाई हामी आकाशबाट वर्षायौं त यसबाट पृथ्वीको वनस्पति उम्रयो फेरि टुट फुट भएर घना भई परस्पर गुथिहाले तर त्यसलाई हावाले उडाई दिन्छ अल्लाह नै हरेक कुरो माथि सामर्थ्यवान छ ।

४६) धन-सम्पति र सन्तान त सांसारिक जीवनको शोभा र मर्यादा हुन् र सत्कर्म जो बाँकी रहिरनेछन्, तिनीहरू पुण्यका दृष्टिले तिम्रो पालनकर्ता कहाँ धेरै राम्रो र आशाको दृष्टिले निकै उत्तम छन् ।

اَلْمَالُ وَالْبَنُوْنَ زِيْنَةُ الْحَيٰوةِ الدُّنْيَا ۚ وَالْبٰقِيٰتُ الصّٰلِحٰتُ خَيْرٌ عِنْدَ رَبِّكَ ثَوَابًا وَّخَيْرٌ اَمَلًا ﴿٤٦﴾

४७) र जुन दिन हामीले पहाडहरूलाई चलाउनेछौं र तिमीले धर्तीलाई समथर फाँटको रूपमा देख्नेछौ, र ती सबै मानिसहरूलाई हामीले एकत्रित गर्नेछौं त तिनीहरू मध्ये एकजनालाई पनि बाँकीछाड्ने छैनौं ।

وَيَوْمَ نُسَيِّرُ الْجِبَالَ وَتَرَى الْاَرْضَ بَارِزَةً ۙ وَّحَشَرْنٰهُمْ فَلَمْ نُغَادِرْ مِنْهُمْ اَحَدًا ﴿٤٧﴾

४८) र सबै तिम्रा पालनकर्ताका अगाडि पंक्तिवद्ध रूपमा ल्याइनेछन्, निश्चित रूपले तिमीहरू हाम्रो समक्ष उस्तै आयौ जुन प्रकारले हामीले तिमीलाई पहिलोपल्ट सृष्टि गरेका थियौं, तर तिमीले त भन्नठानेथ्यौ कि हामीले तिम्रो निम्ति (कियामतको) कुनै समय निर्धारित गर्नेछैनौं ।

وَعُرِضُوْا عَلٰى رَبِّكَ صَفًّا ؕ لَقَدْ جِئْتُمُوْنَا كَمَا خَلَقْنٰكُمْ اَوَّلَ مَرَّةٍ ۢ بَلْ زَعَمْتُمْ اَلَّنْ نَّجْعَلَ لَكُمْ مَّوْعِدًا ﴿٤٨﴾

४९) र कर्मपत्र माझमा राखिनेछ, तब तिमीले त्यसबाट पापीहरूलाई भयभीत भएको देख्नेछौ र तिनीहरूले भन्नेछन् कस्तो अफशोच यो कस्तो किताब हो कि न सानो कुरोलाई छोड्छ न ठूलोलाई, र जो कर्म गरेका हुन्छन् सबैलाई त्यसमा पाउनेछन्, र तिम्रो पालनकर्ताले कसैमाथि अन्याय वा अत्याचार गर्नेछैन ।

وَوُضِعَ الْكِتٰبُ فَتَرَى الْمُجْرِمِيْنَ مُشْفِقِيْنَ مِمَّا فِيْهِ وَيَقُوْلُوْنَ يٰوَيْلَتَنَا مَالِ هٰذَا الْكِتٰبِ لَا يُغَادِرُ صَغِيْرَةً وَّلَا كَبِيْرَةً اِلَّاۤ اَحْصٰىهَا ۚ وَوَجَدُوْا مَا عَمِلُوْا حَاضِرًا ؕ وَلَا يَظْلِمُ رَبُّكَ اَحَدًا ﴿٤٩﴾

५०) र जब हामीले फरिश्ताहरूलाई आदेश गऱ्यौं कि आदमलाई ढोग, त सबैले ढोगे तर इब्लीसले ढोगेन । त्यो जिन्नहरू मध्येको थियो, र त्यसले आफ्नो पालनकर्ताको आदेशको उल्लंघन गऱ्यो । के फेरि पनि तिमीले त्यसलाई र त्यसको सन्तानलाई म बाहेक मित्र बनाउँछौ, जबकि तिनीहरू तिम्रा शत्रु हुन् । यस्ता अत्याचारीहरूका निम्ति नराम्रो प्रतिफल छ ।

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ اسْجُدُوا لِآدَمَ فَسَجَدُوٓا
إِلَّآ إِبْلِيسَ ؕ كَانَ مِنَ الْجِنِّ فَفَسَقَ عَنْ أَمْرِ
رَبِّهٖ ؕ أَفَتَتَّخِذُونَهٗ وَذُرِّيَّتَهٗٓ أَوْلِيَآءَ مِنْ دُونِي
وَهُمْ لَكُمْ عَدُوٌّ ؕ بِئْسَ لِلظّٰلِمِينَ بَدَلًا ﴿٥٠﴾

५१) मैले उनीहरूलाई नत आकाशहरू र न पृथ्वीको सृष्टि गर्ने बेलामा बोलाएको थिएँ र न स्वयं तिनीहरूको सृष्टि गर्नेबेलामा र म मार्गबाट विचलित गराउनेहरूलाई आफ्नो मद्दतगार बनाउँने वाला पनि थिएन ।

مَآ أَشْهَدْتُّهُمْ خَلْقَ السَّمٰوٰتِ وَالْأَرْضِ
وَلَا خَلْقَ أَنْفُسِهِمْ ۪ وَمَا كُنْتُ مُتَّخِذَ الْمُضِلِّينَ
عَضُدًا ﴿٥١﴾

५२) र जुनदिन अल्लाहले आदेश गर्ने छ । कि (अब) तिम्रो विचारमा भएको मेरा साझेदारहरूलाई, बोलाऊ, अनि तिनीहरूले उनलाई बोलाउने छन्, तर तिनीहरू मध्ये कसैले कुनै जवाफ दिनेछैन, र हामीले उनीहरूको बीचमा बर्बादीको माध्यम बनाइदिनेछौं ।

وَيَوْمَ يَقُولُ نَادُوا شُرَكَآءِيَ الَّذِينَ زَعَمْتُمْ
فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا لَهُمْ وَجَعَلْنَا
بَيْنَهُمْ مَّوْبِقًا ﴿٥٢﴾

५३) र पापीहरूले नर्कलाई देखेर बुझी हाल्ने छन् कि तिनीहरू त्यसमा हालिनेवाला छन् तर त्यसबाट मुक्त हुने कुनै बाटो पाउने छैनन् ।

وَرَاَ الْمُجْرِمُونَ النَّارَ فَظَنُّوٓا أَنَّهُمْ مُّوَاقِعُوهَا
وَلَمْ يَجِدُوا عَنْهَا مَصْرِفًا ﴿٥٣﴾

وَلَقَدْ صَرَّفْنَا فِي هَٰذَا الْقُرْآنِ لِلنَّاسِ مِن كُلِّ مَثَلٍ ۚ وَكَانَ الْإِنسَانُ أَكْثَرَ شَيْءٍ جَدَلًا ﴿٥٤﴾

५४) हामीले यस "कुरआनमा" मानिसहरूका लागि विभिन्न प्रकारका उदाहरणहरू वर्णन गरेका छौं, तर मानिस सब भन्दा बढी झगडालु छ ।

وَمَا مَنَعَ النَّاسَ أَن يُؤْمِنُوا إِذْ جَاءَهُمُ الْهُدَىٰ وَيَسْتَغْفِرُوا رَبَّهُمْ إِلَّا أَن تَأْتِيَهُمْ سُنَّةُ الْأَوَّلِينَ أَوْ يَأْتِيَهُمُ الْعَذَابُ قُبُلًا ﴿٥٥﴾

५५) मानिसहरू सम्म मार्गदर्शन आइसके पछि तिनीहरूलाई ईमान ल्याउनबाट र आफ्नो पालनकर्ताबाट क्षमायाचना गर्नबाट यस कुराले मात्र रोकेको थियो कि अघिका मानिसहरूको जस्तो कुराहरू उनको सामु पनि आओस् वा उनको अगाडि खुल्ला रूपमा सजाय आइहालोस् ।

وَمَا نُرْسِلُ الْمُرْسَلِينَ إِلَّا مُبَشِّرِينَ وَمُنذِرِينَ ۚ وَيُجَادِلُ الَّذِينَ كَفَرُوا بِالْبَاطِلِ لِيُدْحِضُوا بِهِ الْحَقَّ ۖ وَاتَّخَذُوا آيَاتِي وَمَا أُنذِرُوا هُزُوًا ﴿٥٦﴾

५६) हामीले त आफ्ना रसूलहरूलाई मात्र यसकारण पठाउँछौं, कि तिनीहरूले शुभ-सन्देश सुनाउन् र डराउन्, तर काफिरहरूले असत्यको सहारा लिई झगडा गर्दछन्, र चाहन्छन् कि त्यसबाट सत्यलाई डगमगाइदिउन्, तिनीहरूले मेरा आयतहरूलाई र जुन कुराले डराइन्छ त्यसलाई उपहास बनाइहालेका छन् ।

وَمَنْ أَظْلَمُ مِمَّن ذُكِّرَ بِآيَاتِ رَبِّهِ فَأَعْرَضَ عَنْهَا وَنَسِيَ مَا قَدَّمَتْ يَدَاهُ ۚ إِنَّا جَعَلْنَا عَلَىٰ قُلُوبِهِمْ أَكِنَّةً أَن يَفْقَهُوهُ وَفِي آذَانِهِمْ وَقْرًا ۖ وَإِن تَدْعُهُمْ إِلَى الْهُدَىٰ فَلَن يَهْتَدُوا إِذًا أَبَدًا ﴿٥٧﴾

५७) त्यसभन्दा ठूलो अत्याचारीको छ, जसलाई उसको पालनकर्ताका कलाम (शब्दहरू) बाट उपदेश गरिन्छ, तैपनि त्यो विमुख भइरहोस्, र जुन कर्महरू उसले अगाडि पठाइसकेको छ, त्यसलाई बिर्सिदेओस् । निःसन्देह हामीले तिनीहरूको हृदय माथि आवरण हालिदिएका छौं, ताकि

यसलाई बुझ्न नसकुन् र कानहरूमा बोझ (पैदा गरिदिएका छौं कि सुन्न नसकुन्) र यद्यपि तपाईले उनीहरूलाई राम्रो बाटोतिर बोलाउँछौ तैपनि तिनी कहिल्यै सही बाटोमा आउने छैनन् ।

५८) र तिम्रो पालनकर्ता ठूलो क्षमादाता र दयावान छ । यदि उसले उनीहरूको क्रियाकलापको लागि सजायको निम्ति तिनीहरूलाई समात्न थाल्ने हो भने तिनीहरू माथि तुरुन्तै सजाय पठाउन सक्छ तर तिनीहरूका निम्ति एउटा समय (निर्धारित) छ जसबाट तिनीहरू कहिल्यै फुत्कन पाउने छैनन् ।

وَرَبُّكَ الْغَفُوْرُ ذُو الرَّحْمَةِ ۭ لَوْ يُؤَاخِذُهُمْ بِمَا كَسَبُوْا لَعَجَّلَ لَهُمُ الْعَذَابَ ۭ بَلْ لَّهُمْ مَّوْعِدٌ لَّنْ يَّجِدُوْا مِنْ دُوْنِهٖ مَوْىِٕلًا ۝٥٨

५९) यी ती बस्तीहरू हुन्, जसलाई तिनीहरूको अत्याचारको कारण हामीले नष्ट गरिहाल्यौं, र तिनीहरूको विध्वसंको निम्ति पनि हामीले एउटा समय निश्चित गरेका थियौं ।

وَتِلْكَ الْقُرٰٓى اَهْلَكْنٰهُمْ لَمَّا ظَلَمُوْا وَجَعَلْنَا لِمَهْلِكِهِمْ مَّوْعِدًا ۝٥٩

६०) जब मूसाले आफ्नो युवकसित भने कि म त दुई समुद्रको दोभानमा नपुगुञ्जेल हिडिनै राख्नेछु, चाहे कैयौ वर्ष सम्म किन चल्न नपरोस् ।

وَاِذْ قَالَ مُوْسٰى لِفَتٰىهُ لَآ اَبْرَحُ حَتّٰٓى اَبْلُغَ مَجْمَعَ الْبَحْرَيْنِ اَوْ اَمْضِيَ حُقُبًا ۝٦٠

६१) जब उनी दुवै समुद्रको संगममा पुगे त त्यहाँ आफ्नो माछा बिर्सिहाले, जसले समुद्रमा सुरुंग जस्तो आफ्नो बाटो बनाइहाल्यो ।

فَلَمَّا بَلَغَا مَجْمَعَ بَيْنِهِمَا نَسِيَا حُوْتَهُمَا فَاتَّخَذَ سَبِيْلَهٗ فِي الْبَحْرِ سَرَبًا ۝٦١

فَلَمَّا جَاوَزَا قَالَ لِفَتٰىهُ اٰتِنَا غَدَآءَنَا لَقَدْ لَقِيْنَا مِنْ سَفَرِنَا هٰذَا نَصَبًا ﴿٦٢﴾

६२) जब यी दुवै त्यहाँबाट अगाडि बढे तब मूसाले आफ्नो युवकसित भने कि हाम्रा भोजन ल्याऊ, यस यात्राबाट हामीलाई बडो कष्ट उठाउनु परेको छ ।

قَالَ اَرَءَيْتَ اِذْ اَوَيْنَآ اِلَى الصَّخْرَةِ فَاِنِّيْ نَسِيْتُ الْحُوْتَ ۫ وَمَآ اَنْسٰنِيْهُ اِلَّا الشَّيْطٰنُ اَنْ اَذْكُرَهٗ ۚ وَاتَّخَذَ سَبِيْلَهٗ فِي الْبَحْرِ ۖ عَجَبًا ﴿٦٣﴾

६३) उसले जवाफ दियो कि के तपाईले हेर्नु भएन ? जब हामी ढुङ्गामा अडेस लिई विश्राम गरिराखेका थियौं त्यहीं नै मैले माछा बिर्सिहालेको थिएँ । वास्तवमा मलाई (तपाईसित) त्यसको चर्चा गर्नबाट शैतानले बिर्साइदियो । त्यसले अनौठो तरिकाले समुद्रमा आफ्नो बाटो बनाइहाल्यो ।

قَالَ ذٰلِكَ مَا كُنَّا نَبْغِ ۖ فَارْتَدَّا عَلٰٓى اٰثَارِهِمَا قَصَصًا ﴿٦٤﴾

६४) मूसाले भने यही थियो जसको तलाशमा हामी थियौं । यसर्थ त्यहींबाट आफ्ना खुट्टाका चिन्हहरू हेर्दै फर्किहाले ।

فَوَجَدَا عَبْدًا مِّنْ عِبَادِنَآ اٰتَيْنٰهُ رَحْمَةً مِّنْ عِنْدِنَا وَعَلَّمْنٰهُ مِنْ لَّدُنَّا عِلْمًا ﴿٦٥﴾

६५) यसरी उनले हाम्रा भक्तहरू मध्ये एउटा भक्त भेट्टाए, जसलाई हामीले आफू कहाँबाट विशेष दया प्रदान गरेका थियौं र आफ्नो तर्फबाट उसलाई विशेष ज्ञान प्रदान गरेका थियौं ।

قَالَ لَهٗ مُوْسٰى هَلْ اَتَّبِعُكَ عَلٰٓى اَنْ تُعَلِّمَنِ مِمَّا عُلِّمْتَ رُشْدًا ﴿٦٦﴾

६६) मूसाले उससित (ख़िज़्र) भने: कि जुन असल ज्ञान तपाईलाई सिखाइएको छ, यदि तपाईले त्यसबाट मलाई सिखाउनुहुन्छ भने म तपाईको सेवा गरी रहन्छु ।

قَالَ إِنَّكَ لَن تَسْتَطِيعَ مَعِيَ صَبْرًا ﴿٦٧﴾

६७) उसले (ख़िज़्रले) भने कि तिमी मेरो साथमा रहेर कदापि धैर्य गर्न सक्दैनौ ।

وَكَيْفَ تَصْبِرُ عَلَىٰ مَا لَمْ تُحِطْ بِهِ خُبْرًا ﴿٦٨﴾

६८) र जुन कुराको तिमीलाई ज्ञान नै छैन, त्यसको हकमा धैर्य पनि कसरी गर्न सक्दछौ ।

قَالَ سَتَجِدُنِي إِن شَاءَ اللَّهُ صَابِرًا وَلَا أَعْصِي لَكَ أَمْرًا ﴿٦٩﴾

६९) मूसाले भने अल्लाहले चाह्यो भने, तपाईले मलाई धैर्यवान पाउनुहुनेछ र कुनै कुरामा मैले तपाईको आज्ञा उल्लघंन गर्ने छैन ।

قَالَ فَإِنِ اتَّبَعْتَنِي فَلَا تَسْأَلْنِي عَن شَيْءٍ حَتَّىٰ أُحْدِثَ لَكَ مِنْهُ ذِكْرًا ﴿٧٠﴾

७०) उसले (ख़िज़्रले) भनेः यदि तिमी मेरो साथमा रहनै चाहन्छौ भने शर्त यो छ कि, मसित कुनै कुराको बारेमा प्रश्न नसोध्नु जबसम्म कि मैले स्वयं त्यसको चर्चा तिमीसित नगरूँ ।

فَانطَلَقَا حَتَّىٰ إِذَا رَكِبَا فِي السَّفِينَةِ خَرَقَهَا قَالَ أَخَرَقْتَهَا لِتُغْرِقَ أَهْلَهَا لَقَدْ جِئْتَ شَيْئًا إِمْرًا ﴿٧١﴾

७१) अनि दुवै हिंडे, जब एउटा डुङ्गामा सवार भए, तब उसले (ख़िज़्रले) डुङ्गाको पटरी तोडि दिए (प्वाल पारिदिए) । मूसाले भनेः के तपाईले त्यसलाई यसकारणले तोड्नुभएको छ कि सवारहरूलाई डुबाइहाल्नुहोस् । यो त तपाईले बडो खतरनाक कुरा गर्नुभो ।

قَالَ أَلَمْ أَقُلْ إِنَّكَ لَن تَسْتَطِيعَ مَعِيَ صَبْرًا ﴿٧٢﴾

७२) उहाँले (खिज्रले) भने, के मैले पहिला नै तिमीलाई भनेको थिएन, कि तिमीले मेरो साथमा कदापि धैर्य धारण गर्न सक्दैनौ ।

قَالَ لَا تُؤَاخِذْنِي بِمَا نَسِيتُ وَلَا تُرْهِقْنِي مِنْ أَمْرِي عُسْرًا ﴿٧٣﴾

७३) मूसाले भने कि जुन त्रुटि मबाट भएको छ, त्यसवापत मलाई नसमात्नुहोस्, र मेरो कुरामा मलाई संकटमा नपार्नुहोस् ।

فَانطَلَقَا حَتَّىٰ إِذَا لَقِيَا غُلَامًا فَقَتَلَهُ قَالَ أَقَتَلْتَ نَفْسًا زَكِيَّةً بِغَيْرِ نَفْسٍ لَّقَدْ جِئْتَ شَيْئًا نُّكْرًا ﴿٧٤﴾

७४) फेरि दुवै अगाडि बढे, अनि एउटा केटो भेट्टाए, तब (खिज्रले) उसलाई मारी दिनुभयो । मूसाले भने कि तपाईले एउटा निर्दोष मानिस किन मारिहाल्नुभो जब कि त्यसले कसैको ज्यान लिएको थिएन। तपाईले एकदमै नराम्रो काम गर्नुभयो ।

قَالَ أَلَمْ أَقُل لَّكَ إِنَّكَ لَن تَسْتَطِيعَ مَعِيَ صَبْرًا ﴿٧٥﴾

७५) उनले भने के मैले तिमीलाई भनेको थिएन कि तिमी मेरो साथमा रहेर धैर्य राख्नसक्दैनौ ?

قَالَ إِن سَأَلْتُكَ عَن شَيْءٍ بَعْدَهَا فَلَا تُصَاحِبْنِي قَدْ بَلَغْتَ مِن لَّدُنِّي عُذْرًا ﴿٧٦﴾

७६) मूसा (अ.) ले भने कि यदि म यसपछि तपाईसित कुनै कुराबारे प्रश्न गरें भने तपाईले मलाई आफ्नो साथमा नराख्नुहोला, निश्चय नै तपाई मतिरबाट क्षमायाचनाको सीमासम्म पुगिसक्नु भो ।

فَانطَلَقَا حَتَّىٰ إِذَا أَتَيَا أَهْلَ قَرْيَةٍ اسْتَطْعَمَا أَهْلَهَا فَأَبَوْا أَن يُضَيِّفُوهُمَا فَوَجَدَا فِيهَا جِدَارًا يُرِيدُ أَن يَنقَضَّ فَأَقَامَهُ قَالَ لَوْ شِئْتَ لَتَّخَذْتَ عَلَيْهِ أَجْرًا ﴿٧٧﴾

७७) फेरि दुवै अगाडि हिंडे, अनि एक गाउँका मानिसहरू छेउ पुगी तिनीहरूसित खाना माँग्नु भयो तर तिनीहरूले उनीहरूको अतिथि सत्कार गर्नबाट स्पष्ट रूपमा इन्कार गरिदिए, अनि उनीहरूले त्यहाँ एउटा भित्तालाई देखे जुन ढल्न लागेको थियो, तब उसले त्यसलाई ठीक पारिदिए । (मूसाले) भने कि यदि

तपाईले चाहेको भए तिनीहरूसँग त्यसको मजदूरी लिनसक्नु हुन्थ्यो ।

قَالَ هَٰذَا فِرَاقُ بَيْنِي وَبَيْنِكَ ۚ سَأُنَبِّئُكَ بِتَأْوِيلِ مَا لَمْ تَسْتَطِعْ عَلَيْهِ صَبْرًا ﴿٧٨﴾

७८) उनले भने कि अब यो बिछोड हो तिम्रो र मेरो बीचमा, अब म तिमीलाई ती कुराहरूको वास्तविकता बताउँछु जसबारे तिमीले धैर्य गर्न सकेको थिएनौ ।

أَمَّا السَّفِينَةُ فَكَانَتْ لِمَسَاكِينَ يَعْمَلُونَ فِي الْبَحْرِ فَأَرَدْتُ أَنْ أَعِيبَهَا وَكَانَ وَرَاءَهُمْ مَلِكٌ يَأْخُذُ كُلَّ سَفِينَةٍ غَصْبًا ﴿٧٩﴾

७९) त्यो जुन डुङ्गा थियो, त्यो (केही) गरीबहरूको(दरिद्रहरूको) थियो, जसले समुद्रमा डुङ्गा सञ्चालन गरी परिश्रमले जीविका चलाउँदथे, मैले त्यसमा केही तोडफोड गरें किन भने तिनीहरूको अगाडि एउटा राजा थियो जसले प्रत्येक (राम्रो) डुङ्गालाई जबरजस्ती आफ्नो अधीनमा पार्दथ्यो ।

وَأَمَّا الْغُلَامُ فَكَانَ أَبَوَاهُ مُؤْمِنَيْنِ فَخَشِينَا أَنْ يُرْهِقَهُمَا طُغْيَانًا وَكُفْرًا ﴿٨٠﴾

८०) र त्यो जुन केटो थियो त्यसको आमा बाबु दुवै मोमिन थिए, हामीलाई डर लाग्यो कि त्यसले आफ्नो हठपूर्ण विद्रोह र कुफ्रबाट, उनीहरूलाई हैरान नपारोस् ।

فَأَرَدْنَا أَنْ يُبْدِلَهُمَا رَبُّهُمَا خَيْرًا مِنْهُ زَكَاةً وَأَقْرَبَ رُحْمًا ﴿٨١﴾

८१) तसर्थ हामीले चाह्यौं कि उनीहरूलाई त्यसको सट्टामा उनीहरूको पालनकर्ताले त्यो भन्दा पवित्र आचरणको र त्यस भन्दा बढी मायागर्ने छोरा प्रदान गरोस् ।

وَأَمَّا الْجِدَارُ فَكَانَ لِغُلَامَيْنِ يَتِيمَيْنِ فِي الْمَدِينَةِ وَكَانَ تَحْتَهُ كَنْزٌ لَهُمَا وَكَانَ أَبُوهُمَا صَالِحًا فَأَرَادَ رَبُّكَ أَنْ يَبْلُغَا أَشُدَّهُمَا وَيَسْتَخْرِجَا

८२) भित्ताको भेद यो हो कि यस शहरमा दुईवटा अनाथ बालकहरू छन् जसका खजाना यस भित्तामुनि

كَنزَهُمَا رَحْمَةً مِّن رَّبِّكَ ۚ وَمَا فَعَلْتُهُۥ عَنْ أَمْرِى ۚ ذَٰلِكَ تَأْوِيلُ مَا لَمْ تَسْطِع عَّلَيْهِ صَبْرًا ﴿٨٢﴾

गाडिएका छन्, र तिनीहरूको बाबु बडो असल मानिस थियो । तसर्थ तिम्रो पालनकर्ताको इच्छा थियो कि दुवै अनाथहरूले आफ्नो तन्नेरी अवस्थामा आएर आफ्नो यो सम्पत्ति तिम्रो पालनकर्ताको कृपा र दयाले झिकुन् । मैले आफ्नो स्वेच्छाले त्यो काम गरेको होइन । यो थियो यी घटनाहरूको वास्तविक तथ्य जसबारे तपाईले धैर्य गर्न सक्नुभएन ।

وَيَسْـَٔلُونَكَ عَن ذِى ٱلْقَرْنَيْنِ ۖ قُلْ سَأَتْلُوا۟ عَلَيْكُم مِّنْهُ ذِكْرًا ﴿٨٣﴾

८३) तपाईसित यिनीहरूले "जुलक़रनैनको" बारेमा सोधी राखेका छन् । तपाईले भनी दिनुस्: कि मैले तिनको बारेमा अलिकति पढेर सुनाउँदछु ।

إِنَّا مَكَّنَّا لَهُۥ فِى ٱلْأَرْضِ وَءَاتَيْنَٰهُ مِن كُلِّ شَىْءٍ سَبَبًا ﴿٨٤﴾

८४) हामीले तिनलाई धरतीमा ठूलो शक्ति प्रदान गरेका थियौं र हामीले उनलाई हरेक सामग्रीको साधन दिएका थियौं ।

فَأَتْبَعَ سَبَبًا ﴿٨٥﴾

८५) ऊ एउटा बाटोमा लाग्यो ।

حَتَّىٰٓ إِذَا بَلَغَ مَغْرِبَ ٱلشَّمْسِ وَجَدَهَا تَغْرُبُ فِى عَيْنٍ حَمِئَةٍ وَوَجَدَ عِندَهَا قَوْمًا ۗ قُلْنَا يَٰذَا ٱلْقَرْنَيْنِ إِمَّآ أَن تُعَذِّبَ وَإِمَّآ أَن تَتَّخِذَ فِيهِمْ حُسْنًا ﴿٨٦﴾

८६) यहाँ सम्म कि सूर्य अस्ताउने ठाउँमा पुग्यो र त्यसलाई एउटा धमिलो पानीको झरनाको मुहानमा अस्ताई राखेको पायो र त्यस झरनाको समीपमा मानिसहरूको एउटा समूह पनि फेला पाऱ्यो । हामीले भन्यौं कि हे जुलकरनैन तिमीले चाहे तिनीहरूलाई कष्ट पुऱ्याऊ अथवा तिनीहरूसित राम्रो व्यवहार गर ।

(यी दुवै कुराहरूमा तिमी अधिकार प्राप्त छौ) ।

قَالَ اَمَّا مَنْ ظَلَمَ فَسَوْفَ نُعَذِّبُهٗ ثُمَّ يُرَدُّ اِلٰى رَبِّهٖ فَيُعَذِّبُهٗ عَذَابًا نُّكْرًا ﴿٨٧﴾

८७) उनले भने कि जसले अत्याचार गर्दछ त्यसलाई त हामीले पनि सजाय दिने छौं, अनि आफ्नो पालनकर्तातिर फर्काइने छ र जसले उसलाई कठोर सजाय दिने छ ।

وَاَمَّا مَنْ اٰمَنَ وَعَمِلَ صَالِحًا فَلَهٗ جَزَآءَ ۨ الْحُسْنٰىۚ وَسَنَقُوْلُ لَهٗ مِنْ اَمْرِنَا يُسْرًا ﴿٨٨﴾

८८) हो जसले ईमान ल्याए र असल कर्म गरे, त्यसको लागि धेरै राम्रो पुरस्कार छ र हामीले आफ्नो मामलामा त्यसमाथि कुनै प्रकारको कठोरता गर्ने छैनौं, र हामी आफ्नो आदेशमा सहुलियत प्रदान गर्नेछौं ।

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٨٩﴾

८९) अनि त्यो अर्कै बाटोतिर लाग्यो ।

حَتّٰٓى اِذَا بَلَغَ مَطْلِعَ الشَّمْسِ وَجَدَهَا تَطْلُعُ عَلٰى قَوْمٍ لَّمْ نَجْعَلْ لَّهُمْ مِّنْ دُوْنِهَا سِتْرًا ﴿٩٠﴾

९०) अनि अन्ततः जब सूर्य उदाउने ठाउँमा पुग्यो, त देख्यो कि त्यो मानिसको यस्तो समूह माथि उदाई राखेको छ, जसका लागि हामीले त्यसबाट अरु कुनै ओट बनाएका छैनौं ।

كَذٰلِكَ ؕ وَقَدْ اَحَطْنَا بِمَا لَدَيْهِ خُبْرًا ﴿٩١﴾

९१) घटना यस्तै छ र जे जति उसको सम्बन्धमा छ, हामीलाई सबैको जानकारी छ ।

ثُمَّ اَتْبَعَ سَبَبًا ﴿٩٢﴾

९२) अनि उसले अर्कै यात्रा तिर लाग्यो ।

حَتّٰٓى اِذَا بَلَغَ بَيْنَ السَّدَّيْنِ وَجَدَ مِنْ دُوْنِهِمَا قَوْمًا ۙ لَّا يَكَادُوْنَ يَفْقَهُوْنَ قَوْلًا ﴿٩٣﴾

९३) अनि दुईटा पर्खालहरूको बीचमा पुग्यो, त देख्यो कि त्यसको अर्कोपट्टि केही मानिसहरू छन् जसले केही कुरा बुझ्न सक्तैनन् ।

९४) तिनीहरूले भने हे जुलकरनैन । याजूज र माजूज यस पृथ्वीमा निकै उपद्रव गरी राखेका छन् । के हामीले तपाईको लागि केही खर्चको व्यवस्था मिलाई दिऔं, कि तपाईले हाम्रो र तिनीहरूको बीचमा एउटा पर्खाल बनाई दिनु हुन्छ ?

قَالُوْا يٰذَا الْقَرْنَيْنِ اِنَّ يَاْجُوْجَ وَمَاْجُوْجَ مُفْسِدُوْنَ فِى الْاَرْضِ فَهَلْ نَجْعَلُ لَكَ خَرْجًا عَلٰٓى اَنْ تَجْعَلَ بَيْنَنَا وَبَيْنَهُمْ سَدًّا ﴿٩٤﴾

९५) (जुलकरनैनले) भने कि मेरो पालनकर्ताले मलाई सामर्थ्यको रूपमा जे प्रदान गरेको छ, त्यही नै प्रशस्त छ, तिमीले मात्र आफ्नो शक्ति सामग्रीबाट मेरो मद्दत गर ताकि म तिमीहरू र उनीहरूको बीचमा एउटा बलियो पर्खाल खड़ा गरूँ ।

قَالَ مَا مَكَّنِّىْ فِيْهِ رَبِّىْ خَيْرٌ فَاَعِيْنُوْنِىْ بِقُوَّةٍ اَجْعَلْ بَيْنَكُمْ وَبَيْنَهُمْ رَدْمًا ﴿٩٥﴾

९६) तिमीले फलामको पाता ल्याई देऊ । दुवै पहाडको बीचको ठाउँमा पर्खाल बनाई सकेपछि आदेश गरे कि आगोलाइ तीव्र पार । जसबाट ती फलामका पाताहरू पूर्ण रूपले आगोको रूपमा परिणित भए, त्यसपछि भने कि मेरो पासमा ल्याऊ, त्यस माथि पग्लेको ताम्बा हाली दिऊँ ।

اٰتُوْنِىْ زُبَرَ الْحَدِيْدِ ۗ حَتّٰٓى اِذَا سَاوٰى بَيْنَ الصَّدَفَيْنِ قَالَ انْفُخُوْا ۗ حَتّٰٓى اِذَا جَعَلَهٗ نَارًا ۙ قَالَ اٰتُوْنِىْٓ اُفْرِغْ عَلَيْهِ قِطْرًا ﴿٩٦﴾

९७) अनि त्यसपछि तिनीहरूमा न त्यस पर्खालमाथि चढ्ने क्षमता थियो न त त्यसमा कुनै प्रकारको प्वाल पार्न सक्दथे ।

فَمَا اسْطَاعُوْٓا اَنْ يَّظْهَرُوْهُ وَمَا اسْتَطَاعُوْا لَهٗ نَقْبًا ﴿٩٧﴾

९८) भने कि यो मेरो पालनकर्ताको कृपा हो । जब मेरो पालनकर्ताको वचन आउँछ तब त्यसले यसलाई ध्वस्त पारी दिने छ । र मेरो पालनकर्ताको वचन सत्य र यथार्थ छ ।

قَالَ هَٰذَا رَحْمَةٌ مِّن رَّبِّي ۖ فَإِذَا جَاءَ وَعْدُ رَبِّي جَعَلَهُ دَكَّاءَ ۖ وَكَانَ وَعْدُ رَبِّي حَقًّا ﴿٩٨﴾

९९) त्यस दिन हामीले तिनीहरूलाई एकआपसमा आकर्मण गर्न छाडी दिने छौं र सूर (तुरही) फूँकिनेछ, अनि हामीले सबैलाई एकत्रित गरी एक ठाउँमा जम्मा गरी हाल्ने छौं ।

وَتَرَكْنَا بَعْضَهُمْ يَوْمَئِذٍ يَمُوجُ فِي بَعْضٍ ۖ وَنُفِخَ فِي الصُّورِ فَجَمَعْنَاهُمْ جَمْعًا ﴿٩٩﴾

१००) त्यस दिन हामीले नर्कलाई काफिरहरूको अगाडि ल्याई दिने छौं ।

وَعَرَضْنَا جَهَنَّمَ يَوْمَئِذٍ لِّلْكَافِرِينَ عَرْضًا ﴿١٠٠﴾

१०१) जसका आँखाहरू मेरो स्मरणबाट ओझलमा थिए, जो कि सुन्न पनि सक्तैनथे ।

الَّذِينَ كَانَتْ أَعْيُنُهُمْ فِي غِطَاءٍ عَن ذِكْرِي وَكَانُوا لَا يَسْتَطِيعُونَ سَمْعًا ﴿١٠١﴾

१०२) के काफिरहरूले यो ठानी राखेका छन्? कि म बाहेक, तिनीहरूले मेरा भक्तहरूलाई आफ्नो समर्थक बनाई हाल्ने छन् ? (सुनि राख) हामीले त यी कुफ्फारहरूको आतिथ्यको निम्ति नर्कलाई तयार गरिसकेका छौं ।

أَفَحَسِبَ الَّذِينَ كَفَرُوا أَن يَتَّخِذُوا عِبَادِي مِن دُونِي أَوْلِيَاءَ ۚ إِنَّا أَعْتَدْنَا جَهَنَّمَ لِلْكَافِرِينَ نُزُلًا ﴿١٠٢﴾

१०३) भनिदिनुस् कि: म तिमीलाई बताई दिन्छु कि कर्महरूको दृष्टिले सबै भन्दा बढी घाटामा को छन् ?

قُلْ هَلْ نُنَبِّئُكُم بِالْأَخْسَرِينَ أَعْمَالًا ﴿١٠٣﴾

१०४) तिनीहरू हुन् जसका सांसारिक जीवनका सम्पूर्ण प्रयासहरू खेर

الَّذِينَ ضَلَّ سَعْيُهُمْ فِي الْحَيَاةِ الدُّنْيَا وَهُمْ يَحْسَبُونَ أَنَّهُمْ يُحْسِنُونَ صُنْعًا ﴿١٠٤﴾

गइहाले र तिनीहरूले यो ठानी राखे छन् कि तिनीहरूले धेरै असल काम गरिराखेका छन् ।

أُولَٰئِكَ الَّذِينَ كَفَرُوا بِآيَاتِ رَبِّهِمْ وَلِقَائِهِ فَحَبِطَتْ أَعْمَالُهُمْ فَلَا نُقِيمُ لَهُمْ يَوْمَ الْقِيَامَةِ وَزْنًا ﴿١٠٥﴾

१०५) यी तिनै मानिसहरू हुन्, जसले कि आफ्नो पालनकर्ताका आयतहरू र उसको साक्षात्कारलाई इन्कार गरे, तसर्थ तिनीहरूका कर्महरू खेर गइहाले, अतः कियामतको दिन हामीले तिनीहरूलाई कुनै वजन दिने छैनौं ।

ذَٰلِكَ جَزَاؤُهُمْ جَهَنَّمُ بِمَا كَفَرُوا وَاتَّخَذُوا آيَاتِي وَرُسُلِي هُزُوًا ﴿١٠٦﴾

१०६) त्यही नर्क तिनीहरूको प्रतिफल हो किनभने तिनीहरूले कुफ्र गरे र हाम्रा आयत र पैगम्बरहरूको उपहास गरे ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ كَانَتْ لَهُمْ جَنَّاتُ الْفِرْدَوْسِ نُزُلًا ﴿١٠٧﴾

१०७) निःसन्देह जसले ईमान ल्याए र असल कर्महरू गरे निःसन्देह तिनीहरूको आतिथ्य-सत्कार स्वर्गका बगैंचाहरूमा हुनेछ ।

خَالِدِينَ فِيهَا لَا يَبْغُونَ عَنْهَا حِوَلًا ﴿١٠٨﴾

१०८) सधैं त्यसमा तिनीहरू रहने छन्, र त्यहाँबाट बासस्थान परिवर्तन गर्न कहिले पनि उनीहरू चाहने छैनन् ।

قُلْ لَوْ كَانَ الْبَحْرُ مِدَادًا لِكَلِمَاتِ رَبِّي لَنَفِدَ الْبَحْرُ قَبْلَ أَنْ تَنْفَدَ كَلِمَاتُ رَبِّي وَلَوْ جِئْنَا بِمِثْلِهِ مَدَدًا ﴿١٠٩﴾

१०९) भनिदिनुस् कि यदि मेरो पालनकर्ताका कुराहरू लेख्नको निम्ति समुद्र मसी बनी हालोस् तै पनि मेरो पालनकर्ताका कुराहरू सिद्धिनुभन्दा अगाडि नै त्यो सुकिसक्ने छ, यद्यपि त्यो जस्तै अर्को समुद्र पनि हामीले त्यसको सहयोगमा किन न ल्याऔं ।

قُلْ إِنَّمَآ أَنَا۠ بَشَرٌ مِّثْلُكُمْ يُوحَىٰٓ إِلَيَّ أَنَّمَآ إِلَٰهُكُمْ إِلَٰهٌ وَٰحِدٌ فَمَن كَانَ يَرْجُوا۟ لِقَآءَ رَبِّهِۦ فَلْيَعْمَلْ عَمَلًا صَٰلِحًا وَلَا يُشْرِكْ بِعِبَادَةِ رَبِّهِۦٓ أَحَدًۢا ﴿١١٠﴾

११०) तपाई भनिदिनुस् कि म त तिमीहरू जस्तै एउटा मानिस हूँ तर होमतिर "वह्य" अवतरित गरिन्छ कि सबैको पूजा योग्य त्यही एउटै पूजनीय छ। अनि जुन मानिसले आफ्नो आराध्यसँग साक्षात्कारको आशा राख्दछ त्यसलाई आवश्यक छ कि असल कर्म गरोस् र आफ्नो पालनकर्ताको पूजामा अरु कसैलाई साझेदार नबनोओस्।



# सूरतु मरयम-१९




सूरतु मरयम मक्की हो र यसमा ९८ आयतहरू र ६ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

كٓهٰيٰعٓصٓ ①

१) काफ-हा-या-ऐन-स्वाद,

ذِكْرُ رَحْمَتِ رَبِّكَ عَبْدَهٗ زَكَرِيَّا ②

२) यो हो तिम्रो पालनकर्ताको त्यस कृपाको चर्चा जुन उसले आफ्नो सेवक “ज़करीया” माथि गरेको थियो,

اِذْ نَادٰى رَبَّهٗ نِدَآءً خَفِيًّا ③

३) जब उनले आफ्नो पालनकर्तासँग गोप्य रूपले प्रार्थना गर्नु भएको थियो ।

قَالَ رَبِّ اِنِّيْ وَهَنَ الْعَظْمُ مِنِّيْ وَاشْتَعَلَ الرَّاْسُ شَيْبًا وَّلَمْ اَكُنْۢ بِدُعَآئِكَ رَبِّ شَقِيًّا ④

४) कि हे मेरो पालनकर्ता मेरो हड्डीहरू कमजोर भइसकेका छन् र टाउकोका कपालहरू सेता भई टल्कन थालेका छन् तर म तिमीसँग याचना गरे पछि कहिल्यै वञ्चित भएको छैन ।

وَاِنِّيْ خِفْتُ الْمَوَالِيَ مِنْ وَّرَآءِيْ وَكَانَتِ امْرَاَتِيْ عَاقِرًا فَهَبْ لِيْ مِنْ لَّدُنْكَ وَلِيًّا ⑤

५) मलाई आफ्नो मृत्यु पश्चात मेरो आफन्त र नजिकका मानिसहरूको बारेमा भय छ र मेरी स्वास्नी पनि बाँझो छे, तसर्थ मलाई आफ्नो तर्फबाट एउटा उत्तराधिकारी प्रदान गर ।

يَّرِثُنِيْ وَيَرِثُ مِنْ اٰلِ يَعْقُوْبَ ۖ وَاجْعَلْهُ رَبِّ رَضِيًّا ⑥

६) जो मेरो पनि उत्तराधिकारी होस् र “याकूबको” सन्ततिको पनि

उत्तराधिकारी होस् र हे मेरो पालनकर्ता तिमीले त्यसलाई आफ्नो प्रिय भक्त बनाऊ ।

७) हे ज़करीया हामीले तिमीलाई एउटा पुत्र प्राप्तिको शुभ-सन्देश दिन्छौं, जसको नाम "यह्या" हो । यसभन्दा अगाडि हामीले यो नाम भएको कुनै व्यक्तिको सृष्टि गरेका छैनौं ।

يٰزَكَرِيَّآ إِنَّا نُبَشِّرُكَ بِغُلٰمٍ ٱسْمُهُۥ يَحْيَىٰ لَمْ نَجْعَل لَّهُۥ مِن قَبْلُ سَمِيًّا ۝٧

८) उनले (जकरिया अलै) भने, पालनकर्ता म कहाँ कसरी पुत्र जन्मने छ, जब कि मेरी स्वास्नी बाँझो छे र म वृद्धावस्थाको अन्तिम चरणमा पुगिसकेको छु ।

قَالَ رَبِّ أَنَّىٰ يَكُونُ لِى غُلٰمٌ وَكَانَتِ ٱمْرَأَتِى عَاقِرًا وَقَدْ بَلَغْتُ مِنَ ٱلْكِبَرِ عِتِيًّا ۝٨

९) आदेश भयो कि यसै (हुनेछ) तिम्रो पालनकर्ताको आदेश भएको छ, मेरो लागि यो कुरो एकदम सजिलो छ र मैले अघि तिम्रो पनि सृष्टि गरिसकेको छु जब तिमी केही पनि थिएनौं ।

قَالَ كَذٰلِكَ قَالَ رَبُّكَ هُوَ عَلَىَّ هَيِّنٌ وَقَدْ خَلَقْتُكَ مِن قَبْلُ وَلَمْ تَكُ شَيْـًٔا ۝٩

१०) भन्न थाले कि मेरो पालनकर्ता मेरो निम्ति कुनै प्रतीक निर्धारित गर । आदेश भयो कि तिम्रो लागि प्रतीक यो छ कि तिमी लाटो न भएपनि कुनै मानिससँग तीन दिनसम्म बोल्न सक्ने छैनौ ।

قَالَ رَبِّ ٱجْعَل لِّىٓ ءَايَةً قَالَ ءَايَتُكَ أَلَّا تُكَلِّمَ ٱلنَّاسَ ثَلٰثَ لَيَالٍ سَوِيًّا ۝١٠

११) तसर्थ ज़करीया (अलै) आफ्नो कोठाबाट निस्की आफ्नो समुदायको पासमा आएर संकेतले भने कि प्रातः र साँझ अल्लाहको गुणगान गर ।

فَخَرَجَ عَلَىٰ قَوْمِهِۦ مِنَ ٱلْمِحْرَابِ فَأَوْحَىٰٓ إِلَيْهِمْ أَن سَبِّحُوا۟ بُكْرَةً وَعَشِيًّا ۝١١

१२) “हे यह्या मेरो किताबलाई बलियो तरिकाले समाति राख” र हामीले यसलाई बाल्यकालदेखि नै ज्ञान (बुद्धिमत्ता) प्रदान गऱ्यौं ।

يَٰيَحْيَىٰ خُذِ ٱلْكِتَٰبَ بِقُوَّةٍ ۖ وَءَاتَيْنَٰهُ ٱلْحُكْمَ صَبِيًّا ﴿١٢﴾

१३) र आफ्नो तर्फबाट सबै दया र पवित्रता पनि प्रदान गऱ्यौं, त्यो निष्ठावान मानिस थियो ।

وَحَنَانًا مِّن لَّدُنَّا وَزَكَوٰةً ۖ وَكَانَ تَقِيًّا ﴿١٣﴾

१४) र आफ्नो माता-पितासँग असल व्यवहार गर्ने मानिस थियो । ऊ अट्टेरी र अवज्ञाकारी थिएन ।

وَبَرًّۢا بِوَٰلِدَيْهِ وَلَمْ يَكُن جَبَّارًا عَصِيًّا ﴿١٤﴾

१५) र जुन दिन उसले जन्म लियो र जुन दिन उसको मृत्यु हुने छ र जुन दिन पुनर्जीवित गरी उठाइने छ, उनी माथि शान्ति (सलाम) होस् ।

وَسَلَٰمٌ عَلَيْهِ يَوْمَ وُلِدَ وَيَوْمَ يَمُوتُ وَيَوْمَ يُبْعَثُ حَيًّا ﴿١٥﴾

१६) यस किताबमा मरियमको कथा पनि वर्णन गर, जब कि तिनी आफ्नो परिवारबाट अलग्गिएर पूर्वतिर लागिन् ।

وَٱذْكُرْ فِى ٱلْكِتَٰبِ مَرْيَمَ إِذِ ٱنتَبَذَتْ مِنْ أَهْلِهَا مَكَانًا شَرْقِيًّا ﴿١٦﴾

१७) र तिनीहरूबाट अदृश्य हुन एउटा आवरण (पर्दा) हालिन्, त्यस बेला हामीले तिनको समीपमा आफ्नो रूह (जिब्राईल) लाई पठायौं अनि उनी तिनको अगाडि पूर्णरूपमा मानिस बनी प्रकट भए ।

فَٱتَّخَذَتْ مِن دُونِهِمْ حِجَابًا فَأَرْسَلْنَآ إِلَيْهَا رُوحَنَا فَتَمَثَّلَ لَهَا بَشَرًا سَوِيًّا ﴿١٧﴾

१८) (मरियमले) भनिन् कि यदि तिमी आत्मसंयमी हौ भने म तिमीबाट रहमानको शरण चाहन्छु ।

قَالَتْ إِنِّىٓ أَعُوذُ بِٱلرَّحْمَٰنِ مِنكَ إِن كُنتَ تَقِيًّا ﴿١٨﴾

१९) उनले भने कि म तिम्रो

قَالَ إِنَّمَآ أَنَا۠ رَسُولُ رَبِّكِ لِأَهَبَ لَكِ غُلَٰمًا زَكِيًّا ﴿١٩﴾

पालनकर्ताबाट पठाइएको (स्वर्गदूत) हूँ, तिमीलाई एउटा पवित्र पुत्र दिन आएको हूँ ।

२०) भन्न थालिन कि मबाट पुत्र कसरी जन्मन सक्छ ? मलाई त अहिलेसम्म कुनै मानिसले स्पर्श गरेको छैन र म चरित्रहीन पनि होइन ।

قَالَتْ أَنَّىٰ يَكُونُ لِي غُلَامٌ وَلَمْ يَمْسَسْنِي بَشَرٌ وَلَمْ أَكُ بَغِيًّا ﴿٢٠﴾

२१) उनले भने कि कुरा त यही नै हो तर तिम्रो पालनकर्ताको आदेश छ कि यो मेरो लागि सजिलो छ । र हामीले त यसलाई मानिसहरूको निम्ति एउटा निशानी बनाउने छौं र आफ्नो विशेष वरदान, र यो त एउटा निश्चित कुरो हो ।

قَالَ كَذَٰلِكِ قَالَ رَبُّكِ هُوَ عَلَيَّ هَيِّنٌ ۖ وَلِنَجْعَلَهُ آيَةً لِّلنَّاسِ وَرَحْمَةً مِّنَّا ۚ وَكَانَ أَمْرًا مَّقْضِيًّا ﴿٢١﴾

२२) अनि तिनी गर्भवती भई हालिन् र यस कारण एउटा टाढा ठाउँतिर लागिन् ।

فَحَمَلَتْهُ فَانتَبَذَتْ بِهِ مَكَانًا قَصِيًّا ﴿٢٢﴾

२३) त्यसपछि प्रसव-पीडाले तिनलाई एउटा खजूरको हाँगा मुनी ल्यायो । भन्न थालिन् कि काश म यसभन्दा अगाडि नै मरी सकेको भए र मानिसको सम्झना र विस्मृत भइहालेको भए राम्रो हुने थियो ।

فَأَجَاءَهَا الْمَخَاضُ إِلَىٰ جِذْعِ النَّخْلَةِ قَالَتْ يَا لَيْتَنِي مِتُّ قَبْلَ هَٰذَا وَكُنتُ نَسْيًا مَّنسِيًّا ﴿٢٣﴾

२४) त्यतिखेर मुनिबाट फरिश्ताले (स्वर्गदूत) तिनलाई आवाज दियो कि चिन्तित न होऊ । तिम्रो पालनकर्ताले तिम्रो खुट्टा मुनिबाट एउटा पानीको मूल बगाई दिएको छ ।

فَنَادَاهَا مِن تَحْتِهَا أَلَّا تَحْزَنِي قَدْ جَعَلَ رَبُّكِ تَحْتَكِ سَرِيًّا ﴿٢٤﴾

وَهُزِّيٓ إِلَيۡكِ بِجِذۡعِ ٱلنَّخۡلَةِ تُسَٰقِطۡ عَلَيۡكِ رُطَبٗا جَنِيّٗا ﴿٢٥﴾

२५) र त्यस खजूरको हाँगोलाई आफूतिर हल्लाऊ, यसले तिम्रो अगाडि खजूरको ताजा फल खसाली दिन्छ ।

فَكُلِي وَٱشۡرَبِي وَقَرِّي عَيۡنٗاۖ فَإِمَّا تَرَيِنَّ مِنَ ٱلۡبَشَرِ أَحَدٗا فَقُولِيٓ إِنِّي نَذَرۡتُ لِلرَّحۡمَٰنِ صَوۡمٗا فَلَنۡ أُكَلِّمَ ٱلۡيَوۡمَ إِنسِيّٗا ﴿٢٦﴾

२६) अब निश्चिन्त भई खाऊ, पिऊ र आँखालाई शीतल पार (अर्थात नव-जात शिशुलाई आफ्ना आँखाले हेरेर सन्तुष्टि प्राप्त गर) । यदि कुनै मानिस देखिन्छ भने, भनी दिनु कि मैले अल्लाह, अत्यन्त दयालुको नाममा व्रतको भाकल गरेको छु । तसर्थ म आज कोहीसित बोल्दिन ।

فَأَتَتۡ بِهِۦ قَوۡمَهَا تَحۡمِلُهُۥۖ قَالُواْ يَٰمَرۡيَمُ لَقَدۡ جِئۡتِ شَيۡـٔٗا فَرِيّٗا ﴿٢٧﴾

२७) अब तिनी हजरत "ईसा" (अ.) लाई लिई आफ्नो समुदायतिर आइन् । तिनीहरूले भन्न थाले मरियम यो त तिमीले साह्रै नराम्रो काम गरिस् ।

يَٰٓأُخۡتَ هَٰرُونَ مَا كَانَ أَبُوكِ ٱمۡرَأَ سَوۡءٖ وَمَا كَانَتۡ أُمُّكِ بَغِيّٗا ﴿٢٨﴾

२८) हे हारूनकी बहिनी न त तिम्रो बाबु नराम्रो थियो न त तिम्री आमा नै चरित्रहीन थिइन् ।

فَأَشَارَتۡ إِلَيۡهِۖ قَالُواْ كَيۡفَ نُكَلِّمُ مَن كَانَ فِي ٱلۡمَهۡدِ صَبِيّٗا ﴿٢٩﴾

२९) त्यसपछि मरियमले आफ्नो बालकतिर संकेत गरिन् । तिनीहरूले भने किलौ हामीले काँखको बच्चा सँग कसरी कुरा गर्न सक्तछौं ?

قَالَ إِنِّي عَبۡدُ ٱللَّهِ ءَاتَىٰنِيَ ٱلۡكِتَٰبَ وَجَعَلَنِي نَبِيّٗا ﴿٣٠﴾

३०) बच्चाले तुरुन्त बोल्यो कि म अल्लाहको सेवक हूँ, उसले मलाई ग्रन्थ प्रदान गरेको छ र मलाई आफ्नो संदेष्टा बनाएको छ ।

३१) र म जहाँ छु (र जुन अवस्थामा छु) उसले मलाई वरदान प्राप्त बनाएको छ र जबसम्म म जीवित छु मलाई नमाज र दान (जकात) को आदेश गरेको छ ।

وَّجَعَلَنِیْ مُبٰرَكًا اَیْنَ مَا كُنْتُ وَاَوْصٰنِیْ بِالصَّلٰوةِ وَالزَّكٰوةِ مَا دُمْتُ حَیًّا ﴿٣١﴾

३२) र उसले मलाई आफ्नी आमाको सेवा गर्नेवाला बनाएको छ र मलाई अटेरी र अभागा बनाएको होइन ।

وَّبَرًّۢا بِوَالِدَتِیْ وَلَمْ یَجْعَلْنِیْ جَبَّارًا شَقِیًّا ﴿٣٢﴾

३३) र जुन दिन मैले जन्म लिए र जुन दिन म मर्ने छु, र जुन दिन जीवित भई उठाइने छु, म माथि शान्ति नै शान्ति छ ।

وَالسَّلٰمُ عَلَیَّ یَوْمَ وُلِدْتُّ وَیَوْمَ اَمُوْتُ وَیَوْمَ اُبْعَثُ حَیًّا ﴿٣٣﴾

३४) यो हो वास्तविक कथा घटना ईसा पुत्र मरियम (अ.) को यही नै त्यो साँचो कुरो हो जसमाथि मानिसहरूले शंका उपशंका गर्दछन् ।

ذٰلِكَ عِیْسَی ابْنُ مَرْیَمَ ۚ قَوْلَ الْحَقِّ الَّذِیْ فِیْهِ یَمْتَرُوْنَ ﴿٣٤﴾

३५) अल्लाहको गौरवलाई यो सुहाउँदैन कि उसको आफ्नो सन्तान होस् । ऊ त एकदम पवित्र छ । जब कुनै कुराको इच्छा गर्दछ, तब त्यसलाई यति मात्र भन्दछ कि भई हाल, अनि त्यो भइहाल्छ ।

مَا كَانَ لِلّٰهِ اَنْ یَّتَّخِذَ مِنْ وَّلَدٍ ۙ سُبْحٰنَهٗ ؕ اِذَا قَضٰۤی اَمْرًا فَاِنَّمَا یَقُوْلُ لَهٗ كُنْ فَیَكُوْنُ ﴿٣٥﴾

३६) अल्लाह नै मेरो र तिमी सबैको पालनकर्ता हो, तसर्थ तिमीहरू उसैको पूजा गर । यही नै सोझो मार्ग हो ।

وَاِنَّ اللّٰهَ رَبِّیْ وَرَبُّكُمْ فَاعْبُدُوْهُ ؕ هٰذَا صِرَاطٌ مُّسْتَقِیْمٌ ﴿٣٦﴾

३७) अनि यी समुदायहरूले आपसमा मतभेदका कुरा गर्न थाले । तसर्थ

فَاخْتَلَفَ الْاَحْزَابُ مِنْۢ بَیْنِهِمْ ۚ فَوَیْلٌ لِّلَّذِیْنَ كَفَرُوْا مِنْ مَّشْهَدِ یَوْمٍ عَظِیْمٍ ﴿٣٧﴾

काफिरहरूलाई एउटा ठूलो भयङ्कर दिन आउनाको कारणले खराबी, (धिक्कार) छ ।

३८) तिनीहरू जुन दिन हाम्रो सामु आउँनेछन् । राम्ररी सुन्ने र देख्ने वाला हुने छन्, तर अत्याचारीहरू आज खुल्ला रूपले मार्ग विचलित छन् ।

أَسْمِعْ بِهِمْ وَأَبْصِرْ يَوْمَ يَأْتُونَنَا لَٰكِنِ الظَّٰلِمُونَ الْيَوْمَ فِي ضَلَٰلٍ مُّبِينٍ ﴿٣٨﴾

३९) तपाईले तिनीहरूलाई त्यस दुःख र पश्चतापको भयबाट खबरदार गरी दिनुस् जब कुराको टुङ्गो लाग्ने छ र तिनीहरू लापरवाहीमा नै रही रहने छन् र तिनीहरू ईमान ल्याउने छैनन् ।

وَأَنذِرْهُمْ يَوْمَ الْحَسْرَةِ إِذْ قُضِيَ الْأَمْرُ وَهُمْ فِي غَفْلَةٍ وَهُمْ لَا يُؤْمِنُونَ ﴿٣٩﴾

४०) हामी नै पृथ्वी र त्यसमा बस्नेहरू सबैको वारिस हुने छौं र सबै मानिसहरू हामीतिर नै फर्काएर ल्याइने छन् ।

إِنَّا نَحْنُ نَرِثُ الْأَرْضَ وَمَنْ عَلَيْهَا وَإِلَيْنَا يُرْجَعُونَ ﴿٤٠﴾

४१) यस किताबमा इब्राहीम (अ.) को घटना बयान गर । निःसन्देह उनी एउटा सत्यनिष्ठ पैगम्बर थिए ।

وَاذْكُرْ فِي الْكِتَٰبِ إِبْرَٰهِيمَ إِنَّهُ كَانَ صِدِّيقًا نَّبِيًّا ﴿٤١﴾

४२) जब उनले आफ्नो पितासँग भने बुबा तपाईले यस्ता कुराहरूको पूजा किन गर्नु हुन्छ, जसले कि न सुन्दछन्, न देख्दछन् ? र न त तपाईको कुनै फाइदा पुऱ्याउन सक्तछन् ?

إِذْ قَالَ لِأَبِيهِ يَٰٓأَبَتِ لِمَ تَعْبُدُ مَا لَا يَسْمَعُ وَلَا يُبْصِرُ وَلَا يُغْنِي عَنكَ شَيْـًٔا ﴿٤٢﴾

४३) मेरो बुवा तपाई हेर्नुस् मलाई यस्तो ज्ञान प्राप्त भएको छ जुन

يَٰٓأَبَتِ إِنِّي قَدْ جَآءَنِي مِنَ الْعِلْمِ مَا لَمْ يَأْتِكَ فَاتَّبِعْنِيٓ أَهْدِكَ صِرَٰطًا سَوِيًّا ﴿٤٣﴾

तपाईलाई भएको छैन तसर्थ तपाईले मेरो कुरा मान्नुस्, मैले तपाईलाई एकदम सोझो मार्गमा हिंडाउने छु ।

४४) पिताज्यू शैतानको पूजा न गर्नुस् । निःसन्देह शैतान त दयालु अल्लाहको आज्ञाको उल्लघंनकारी हो ।

يَٰٓأَبَتِ لَا تَعۡبُدِ ٱلشَّيۡطَٰنَۖ إِنَّ ٱلشَّيۡطَٰنَ كَانَ لِلرَّحۡمَٰنِ عَصِيّٗا ﴿٤٤﴾

४५) पिताज्यू मलाई डर लाग्छ कि यस्तो न होस् कि अल्लाहको सजाय तपाईमाथि आइलागोस् र त्यसपछि तपाई शैतानको साथी भइहाल्नुहोस् ।

يَٰٓأَبَتِ إِنِّيٓ أَخَافُ أَن يَمَسَّكَ عَذَابٞ مِّنَ ٱلرَّحۡمَٰنِ فَتَكُونَ لِلشَّيۡطَٰنِ وَلِيّٗا ﴿٤٥﴾

४६) उसले जवाफ दियो कि हे इब्राहीम के तिमी हाम्रा देवताहरूबाट विमुख भइराखेका छौ, यदि तिमीले आफ्नो बाटो त्यागेनौं भने मैले तिमीलाई ढुङ्गाले हानि मारि दिनेछु, गई हाल, मबाट एउटा लामो अवधिसम्म अलग्गै बस ।

قَالَ أَرَاغِبٌ أَنتَ عَنۡ ءَالِهَتِي يَٰٓإِبۡرَٰهِيمُۖ لَئِن لَّمۡ تَنتَهِ لَأَرۡجُمَنَّكَۖ وَٱهۡجُرۡنِي مَلِيّٗا ﴿٤٦﴾

४७) (इब्राहीमले) भने ठीक छ “सलामुन् अलैकुम” तिमी माथि शान्ति होस् म त आफ्नो पालनकर्तासँग तपाईको छुटकराको निम्ति प्रार्थना गरिरहने छु । ऊ ममाथि अत्यन्त दयावान छ ।

قَالَ سَلَٰمٌ عَلَيۡكَۖ سَأَسۡتَغۡفِرُ لَكَ رَبِّيٓۖ إِنَّهُۥ كَانَ بِي حَفِيّٗا ﴿٤٧﴾

४८) म त तपाईहरू र जस- जसलाई तपाईले अल्लाह बाहेक पुकार्नु हुन्छ, सबैलाई त्यागि राखेको छु र

وَأَعۡتَزِلُكُمۡ وَمَا تَدۡعُونَ مِن دُونِ ٱللَّهِ وَأَدۡعُواْ رَبِّي عَسَىٰٓ أَلَّآ أَكُونَ بِدُعَآءِ رَبِّي شَقِيّٗا ﴿٤٨﴾

म मात्र आफ्नो पालनकर्तालाई पुकार्दछु । मलाई विश्वास छ म आफ्नो पालनकर्तासित प्रार्थना गरेपछि वञ्चित रहने छैन ।

فَلَمَّا اعْتَزَلَهُمْ وَمَا يَعْبُدُونَ مِن دُونِ اللَّهِ وَهَبْنَا لَهُ إِسْحَاقَ وَيَعْقُوبَ ۖ وَكُلًّا جَعَلْنَا نَبِيًّا ﴿٤٩﴾

४९) जब इब्राहीम उनीहरू र उनीहरूले पूजा गर्दै आएका अल्लाह बाहेकका अरुलाई छाँडेर अलग्ग भइहाले तब हामीले उनलाई "इस्हाक" र "यअ्कूब" (अलै) प्रदान गऱ्यौं र दुवैलाई नबी (संदेष्टा) बनायौं ।

وَوَهَبْنَا لَهُم مِّن رَّحْمَتِنَا وَجَعَلْنَا لَهُمْ لِسَانَ صِدْقٍ عَلِيًّا ﴿٥٠﴾

५०) र उनीहरूलाई आफ्नो कृपाले धेरै कुराहरू प्रदान गऱ्यौं र हामीले उनको सत्य वचनलाई उच्च सम्मान प्रदान गऱ्यौं ।

وَاذْكُرْ فِي الْكِتَابِ مُوسَىٰ ۚ إِنَّهُ كَانَ مُخْلَصًا وَكَانَ رَسُولًا نَّبِيًّا ﴿٥١﴾

५१) यस किताबमा मूसा (अलै) को पनि चर्चा गर्नुस् । जो छानिएर पठाइएका रसूल र नबी (संदेष्टा) थिए ।

وَنَادَيْنَاهُ مِن جَانِبِ الطُّورِ الْأَيْمَنِ وَقَرَّبْنَاهُ نَجِيًّا ﴿٥٢﴾

५२) हामीले उहाँलाई तूर पर्वतको दाहिनेतिरबाट पुकाऱ्यौं र कुरा गर्नको निम्ति उनलाई नजिक बोलायौं ।

وَوَهَبْنَا لَهُ مِن رَّحْمَتِنَا أَخَاهُ هَارُونَ نَبِيًّا ﴿٥٣﴾

५३) र आफ्नो विशेष कृपाबाट उनलाई र उनको भाइ हारूनलाई संदेष्टा र पैगम्बरको (जिम्मेवारी) प्रदान गऱ्यौं ।

وَاذْكُرْ فِي الْكِتَابِ إِسْمَاعِيلَ ۚ إِنَّهُ كَانَ صَادِقَ الْوَعْدِ وَكَانَ رَسُولًا نَّبِيًّا ﴿٥٤﴾

५४) यस किताबमा इस्माईल (अलै)को पनि चर्चा गर्नुस् । उनी आफ्नो वचनको एकदम पक्का र हामीबाट

पठाइएका रसूल र नबी (संदेष्टा) थिए ।

وَكَانَ يَأْمُرُ أَهْلَهُ بِالصَّلٰوةِ وَالزَّكٰوةِ ۖ وَكَانَ عِنْدَ رَبِّهِ مَرْضِيًّا ﴿٥٥﴾

५५) उनले आफ्ना घरका मानिसहरूलाई सधैं नमाज र जकातको निर्देशन गर्दथे र आफ्नो पालनकर्ताको दृष्टिमा मनपराइएका र मर्यादित पनि थिए ।

وَاذْكُرْ فِي الْكِتٰبِ إِدْرِيسَ ۚ إِنَّهُ كَانَ صِدِّيقًا نَّبِيًّا ﴿٥٦﴾

५६) र यस किताबमा “इदरिस (अलै) को” पनि चर्चा गर्नुस् । उनी पनि अत्यन्त असल आचरणको नबी थिए ।

وَّرَفَعْنٰهُ مَكَانًا عَلِيًّا ﴿٥٧﴾

५७) हामीले उनलाई उच्च ठाउँमा उठायौं ।

أُولٰٓئِكَ الَّذِينَ أَنْعَمَ اللّٰهُ عَلَيْهِمْ مِّنَ النَّبِيّٖنَ مِنْ ذُرِّيَّةِ اٰدَمَ ۗ وَمِمَّنْ حَمَلْنَا مَعَ نُوحٍ ۖ وَّمِنْ ذُرِّيَّةِ إِبْرٰهِيمَ وَإِسْرَآءِيلَ ۖ وَمِمَّنْ هَدَيْنَا وَاجْتَبَيْنَا ۚ إِذَا تُتْلٰى عَلَيْهِمْ اٰيٰتُ الرَّحْمٰنِ خَرُّوا سُجَّدًا وَّبُكِيًّا ﴿٥٨﴾

५८) यिनै ती नबीहरू हुन् जसमाथि अल्लाहले आफ्ना कृपा र पुरस्कार प्रदान गर्‍यो जो आदमका सन्ततिमध्येबाट र ती मानिसहरूको जातिबाट हुन् जसलाई हामीले नूह (अलै) को साथमा डुङ्गामा सवार गरायौं र “इब्राहीम” र “यअ्कूब (अलै)का” सन्ततिहरूमध्येबाट र ती मानिसहरूमध्येबाट हुन् जसलाई हामीले मार्गदर्शन गर्‍यौं, जब उनको अगाडि हाम्रा आयतहरू पढिन्थे त यिनीहरू ढोग्दथे र रोइरहन्थे र गिड्गिडाएर ढली हाल्थे ।

فَخَلَفَ مِنْ بَعْدِهِمْ خَلْفٌ أَضَاعُوا الصَّلٰوةَ وَاتَّبَعُوا الشَّهَوٰتِ ۖ فَسَوْفَ يَلْقَوْنَ غَيًّا ﴿٥٩﴾

५९) अनि उनीहरूपछि उनका केही यस्ता सन्तान आए जसले नमाज छोडिहाले र कामवासनाको पूर्तिमा लागिहाले त्यसकारण छिट्टै तिनीहरूको क्षति तिनीहरूको सामुन्ने आउनेछ ।

إِلَّا مَن تَابَ وَءَامَنَ وَعَمِلَ صَٰلِحًا فَأُوْلَٰٓئِكَ
يَدْخُلُونَ ٱلْجَنَّةَ وَلَا يُظْلَمُونَ شَيْـًٔا ﴿٦٠﴾

६०) तर हो, जसले प्रायश्चित गरे र ईमान ल्याए र सत्कर्म गरे, तिनीहरू बहिश्त (स्वर्ग) मा प्रवेश पाउने छन् र तिनीहरूको केही पनि हानि नोक्सानी गरिने छैन ।

جَنَّٰتِ عَدْنٍ ٱلَّتِى وَعَدَ ٱلرَّحْمَٰنُ عِبَادَهُۥ
بِٱلْغَيْبِ ۚ إِنَّهُۥ كَانَ وَعْدُهُۥ مَأْتِيًّا ﴿٦١﴾

६१) सधैंको स्वर्गमा जसको बारेमा अल्लाहले आफ्ना भक्तहरूलाई परोक्षमा वचन दिएको छ । निःसन्देह उसको वचन पूरा हुने छ ।

لَّا يَسْمَعُونَ فِيهَا لَغْوًا إِلَّا سَلَٰمًا ۖ وَلَهُمْ رِزْقُهُمْ
فِيهَا بُكْرَةً وَعَشِيًّا ﴿٦٢﴾

६२) तिनीहरूले त्यसमा कुनै अनर्गल कुरा सुन्ने छैनन्, मात्र शान्तिको कुरा सुन्ने छन् र तिनीहरूको निम्ति विहान-बेलुकी जीविका (खाना) तयार रहने छ ।

تِلْكَ ٱلْجَنَّةُ ٱلَّتِى نُورِثُ مِنْ عِبَادِنَا مَن كَانَ
تَقِيًّا ﴿٦٣﴾

६३) यो हो त्यो जन्नत (स्वर्ग) जसको वारिस हामीले आफ्ना भक्तहरू मध्ये त्यस्तालाई बनाउँछौं, जो आत्म-संयमी हुन्छन् ।

وَمَا نَتَنَزَّلُ إِلَّا بِأَمْرِ رَبِّكَ ۖ لَهُۥ مَا بَيْنَ أَيْدِينَا
وَمَا خَلْفَنَا وَمَا بَيْنَ ذَٰلِكَ ۚ وَمَا كَانَ رَبُّكَ نَسِيًّا ﴿٦٤﴾

६४) हामी तिम्रो पालनकर्ताको आज्ञा नभई अवतरित हुन सक्दैनौं, जेजति हाम्रो अगाडि छ र जेजति हाम्रो पछाडि छ र जे जति त्यसको मध्यमा छ सबै उसैको हो र तिम्रो पालनकर्ता बिर्सनेवाला छैन ।

رَّبُّ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَمَا بَيْنَهُمَا فَٱعْبُدْهُ
وَٱصْطَبِرْ لِعِبَٰدَتِهِۦ ۚ هَلْ تَعْلَمُ لَهُۥ سَمِيًّا ﴿٦٥﴾

६५) आकाश र धरती र जे दुईटैको माँझमा छ सबैको मालिक उही हो, तिमी उसैको पूजा गर र उसैको आराधनामा दृढ रह, के

तिम्रो जानकारीमा उस जस्तो नाम (र क्षमता) वाला छ? (कदापि छैन ।)

وَيَقُولُ الْإِنسَانُ أَإِذَا مَا مِتُّ لَسَوْفَ أُخْرَجُ حَيًّا ﴿٦٦﴾

६६) मानिसले भन्दछ कि के जब म मरी हाल्छु, त फेरि जीवित गराई बाहिर निकालिने छु ?

أَوَلَا يَذْكُرُ الْإِنسَانُ أَنَّا خَلَقْنَاهُ مِن قَبْلُ وَلَمْ يَكُ شَيْئًا ﴿٦٧﴾

६७) के यो मानिस यति पनि स्मरण गर्दैन कि हामीले उसलाई पहिले पनि सृष्टि गरेका थियौं जबकि ऊ केही पनि थिएन ।

فَوَرَبِّكَ لَنَحْشُرَنَّهُمْ وَالشَّيَاطِينَ ثُمَّ لَنُحْضِرَنَّهُمْ حَوْلَ جَهَنَّمَ جِثِيًّا ﴿٦٨﴾

६८) तिम्रो पालनकर्ताको शपथ हामीले तिनीहरूलाई र शैतानलाई एकत्रित पार्ने छौं र यी सबैलाई जहन्नमको छेउमा उपस्थित गराउने छौं (तिनीहरूले) घुँडा टेकी राखेका हुनेछन् ।

ثُمَّ لَنَنزِعَنَّ مِن كُلِّ شِيعَةٍ أَيُّهُمْ أَشَدُّ عَلَى الرَّحْمَٰنِ عِتِيًّا ﴿٦٩﴾

६९) अनि प्रत्येक समूहबाट हामीले त्यस्तालाई निकालेर उभ्याउने छौं । जसले जाहिर हुन्छ कि उनीहरू मध्येको अल्लाहको आदेशको गम्भीर अवज्ञा गर्दथे ।

ثُمَّ لَنَحْنُ أَعْلَمُ بِالَّذِينَ هُمْ أَوْلَىٰ بِهَا صِلِيًّا ﴿٧٠﴾

७०) फेरि हामी तिनीहरूलाई राम्ररी जान्दछौं जो नर्कमा प्रवेशको सजाय भोग्नेवाला छन् ।

وَإِن مِّنكُمْ إِلَّا وَارِدُهَا ۚ كَانَ عَلَىٰ رَبِّكَ حَتْمًا مَّقْضِيًّا ﴿٧١﴾

७१) तिमी मध्ये हरेक अवश्य नै त्यहाँ पुग्ने वाला छ, यो तिम्रो पालनकर्ताको निश्चित रूपले पूरा हुने आदेश हो ।

ثُمَّ نُنَجِّي الَّذِينَ اتَّقَوا وَّنَذَرُ الظَّالِمِينَ فِيهَا جِثِيًّا ﴿٧٢﴾

७२) अनि हामीले आत्म-संयमीहरूलाई बचाउने छौं र अवज्ञकारीहरूलाई

त्यहीं घुँडाटेकेको अवस्थामा छाडी दिनेछौं ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ قَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا أَيُّ الْفَرِيقَيْنِ خَيْرٌ مَّقَامًا وَأَحْسَنُ نَدِيًّا ﴿٧٣﴾

७३) जब तिमीहरूको अगाडि हाम्रा स्पष्ट आयतहरूको पाठ गरिन्छ त काफिरहरूले मुसलमानहरूसित भन्दछन् कि भन हाम्रा र तिम्रा समूहहरू मध्ये कुन चाहिँ उच्च स्थान प्राप्त छ ? र कसको भेला शानदार छ ?

وَكَمْ أَهْلَكْنَا قَبْلَهُم مِّن قَرْنٍ هُمْ أَحْسَنُ أَثَاثًا وَرِئْيًا ﴿٧٤﴾

७४) हामीले त तिनीहरू भन्दा अगाडिका कैयौं समूहहरूको नाश गरिसकेका छौं । जो साधन सम्पन्नतामा र नाममा उनीहरूभन्दा धेरै बढी थिए ।

قُلْ مَن كَانَ فِي الضَّلَالَةِ فَلْيَمْدُدْ لَهُ الرَّحْمَٰنُ مَدًّا ۚ حَتَّىٰ إِذَا رَأَوْا مَا يُوعَدُونَ إِمَّا الْعَذَابَ وَإِمَّا السَّاعَةَ فَسَيَعْلَمُونَ مَنْ هُوَ شَرٌّ مَّكَانًا وَأَضْعَفُ جُندًا ﴿٧٥﴾

७५) भनिदिनुस्: कि जुन मानिस मार्ग विचलनमा छ, रहमान त्यसलाई बिस्तारै लामो छूट दिइराखेको हुन्छ, जबसम्म कि तिनीहरूले ती कुराहरू देख्दैनन्, जसको वचन दिइन्छ अर्थात सजाय वा प्रलय (कियामत) । त्यतिखेर उनीहरूलाई राम्ररी थाहा हुने छ कि को निम्न श्रेणीको छ र कुन चाहिँ कमजोर समूहको छ ।

وَيَزِيدُ اللَّهُ الَّذِينَ اهْتَدَوْا هُدًى ۗ وَالْبَاقِيَاتُ الصَّالِحَاتُ خَيْرٌ عِندَ رَبِّكَ ثَوَابًا وَخَيْرٌ مَّرَدًّا ﴿٧٦﴾

७६) र जसले मार्ग पाइहालेका छन्, अल्लाहले तिनीहरूको मार्गदर्शनमा अभिवृद्धि गर्दछ र शेष रहने असल कर्महरू तिम्रो पालनकर्ता कहाँको पुरस्कार र अन्तिम परिणामको दृष्टिकोणले उत्तम छन् ।

७७) के तिमीले त्यस व्यक्तिलाई पनि देखेका छौं जसले हाम्रा आयतहरूलाई इन्कार गर्‍यो र भन्न थाल्यो कि (यदि म पुनर्जीवित भएँ) त मलाई यही सम्पत्ति र सन्तान (त्यहाँ) अवश्य प्राप्त हुनेछन् ।

أَفَرَءَيْتَ الَّذِي كَفَرَ بِآيَٰتِنَا وَقَالَ لَأُوتَيَنَّ مَالًا وَوَلَدًا ﴿٧٧﴾

७८) के उसले अदृश्यको समाचार पाई सकेको छ, वा अल्लाह कहाँबाट वाचा प्राप्त गरिसकेको छ ?

أَطَّلَعَ الْغَيْبَ أَمِ اتَّخَذَ عِندَ الرَّحْمَٰنِ عَهْدًا ﴿٧٨﴾

७९) कदापि होइन यसले जे भन्दैछ । हामीले त्यसलाई अवश्य लेख्दै जानेछौं र उसको लागि बिस्तारै सजायमा वृद्धि गर्दै जानेछौं ।

كَلَّا ۚ سَنَكْتُبُ مَا يَقُولُ وَنَمُدُّ لَهُ مِنَ الْعَذَابِ مَدًّا ﴿٧٩﴾

८०) उसले जुन कुराहरूबारे भनी राखेको छ, ती सबै हामीले पछि लिई हाल्ने छौं र त्यो एक्लै हाम्रो सामु उपस्थित हुनेछ ।

وَنَرِثُهُ مَا يَقُولُ وَيَأْتِينَا فَرْدًا ﴿٨٠﴾

८१) उनीहरूले अल्लाह बाहेक आफ्ना केही अन्य पूज्य बनाई राखेका छन्, ताकि तिनीहरू उनीहरूको निम्ति सम्मानका कारण बनुन् ।

وَاتَّخَذُوا مِن دُونِ اللَّهِ ءَالِهَةً لِّيَكُونُوا لَهُمْ عِزًّا ﴿٨١﴾

८२) तर यस्तो कदापि हुने छैन, ती झूठा पूज्यहरू उनीहरूको पूजाबाट इन्कार गर्ने छन्, र उल्टै उनका शत्रु भई हाल्ने छन् ।

كَلَّا ۚ سَيَكْفُرُونَ بِعِبَادَتِهِمْ وَيَكُونُونَ عَلَيْهِمْ ضِدًّا ﴿٨٢﴾

८३) के तिमीले देखेनौ कि हामीले काफिरहरूको पासमा शैतानहरूलाई पठाउँछौं, जसले तिनीहरूलाई निकै उचाल्ने गर्दछन् ।

أَلَمْ تَرَ أَنَّا أَرْسَلْنَا الشَّيَٰطِينَ عَلَى الْكَٰفِرِينَ تَؤُزُّهُمْ أَزًّا ﴿٨٣﴾

| | |
|---|---|
| ८४) तिमीले तिनीहरूको बारेमा हतार नगर । हामीले त स्वयं तिनीहरूको निम्ति दिनको गणना गरिराखेका छौं । | فَلَا تَعْجَلْ عَلَيْهِمْ ۖ إِنَّمَا نَعُدُّ لَهُمْ عَدًّا ﴿٨٤﴾ |
| ८५) (त्यस दिनलाई स्मरण गर) जब हामीले परहेजगराहरूलाई रहमानको समक्ष अतिथिको रूपमा एकत्रित गर्ने छौं । | يَوْمَ نَحْشُرُ الْمُتَّقِينَ إِلَى الرَّحْمَٰنِ وَفْدًا ﴿٨٥﴾ |
| ८६) र अपराधिहरूलाई निकै तिर्खाएको अवस्थामा नर्क तिर धपाउँदै लग्ने छौं । | وَنَسُوقُ الْمُجْرِمِينَ إِلَىٰ جَهَنَّمَ وِرْدًا ﴿٨٦﴾ |
| ८७) कसैलाई उनीहरूको सिफारिशगर्ने अधिकार प्राप्त हुने छैन। तर हो त्यो व्यक्ति यातनाबाट सुरक्षित रहने छ जसले रहमान कहाँबाट अनुमोदन प्राप्त गरिसकेको छ । | لَا يَمْلِكُونَ الشَّفَاعَةَ إِلَّا مَنِ اتَّخَذَ عِنْدَ الرَّحْمَٰنِ عَهْدًا ﴿٨٧﴾ |
| ८८) उनीहरूले भन्दछन्: रहमानले (अल्लाह) आफ्नो सन्तान बनाएको छ । | وَقَالُوا اتَّخَذَ الرَّحْمَٰنُ وَلَدًا ﴿٨٨﴾ |
| ८९) निःसन्देह अत्यन्त गम्भीर कुरा हो जुन कि तिमीहरूले (मन गढन्तरूपमा) रचेर ल्याएका छौ । | لَقَدْ جِئْتُمْ شَيْئًا إِدًّا ﴿٨٩﴾ |
| ९०) निकट छ यस कुराबाट आकाशमा विष्फोट भई हालोस् र धरती टुक्रा-टुक्रा भई हालोस् र पहाडहरू क्षतविक्षत भई खसिहालोस् । | تَكَادُ السَّمَاوَاتُ يَتَفَطَّرْنَ مِنْهُ وَتَنْشَقُّ الْأَرْضُ وَتَخِرُّ الْجِبَالُ هَدًّا ﴿٩٠﴾ |
| ९१) किनभने तिनीहरूले रहमानको (अल्लाह) सन्तानको दावी गरे । | أَنْ دَعَوْا لِلرَّحْمَٰنِ وَلَدًا ﴿٩١﴾ |

وَمَا يَنۢبَغِي لِلرَّحۡمَٰنِ أَن يَتَّخِذَ وَلَدًا ﴿٩٢﴾

९२) यो कुरा अल्लाहको प्रतिष्ठाको प्रतिकूल छ कि उसले कसैलाई आफ्नो सन्तान बनाओस् ।

إِن كُلُّ مَن فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِ إِلَّآ ءَاتِي ٱلرَّحۡمَٰنِ عَبۡدٗا ﴿٩٣﴾

९३) आकाशहरू र धरतीमा जो पनि छन् सबै अल्लाहका दासका रूपमा आउने वाला छन् ।

لَّقَدۡ أَحۡصَىٰهُمۡ وَعَدَّهُمۡ عَدّٗا ﴿٩٤﴾

९४) त्यसले तिनीहरूका आँकलन गरिसकेको छ र तिनीहरूको राम्ररी गणना गरिसकेको छ ।

وَكُلُّهُمۡ ءَاتِيهِ يَوۡمَ ٱلۡقِيَٰمَةِ فَرۡدًا ﴿٩٥﴾

९५) तिनीहरू सबका सब कियामतको दिन एक्लै त्यस (रहमान) को सामु उपस्थित हुनेछन् ।

إِنَّ ٱلَّذِينَ ءَامَنُواْ وَعَمِلُواْ ٱلصَّٰلِحَٰتِ سَيَجۡعَلُ لَهُمُ ٱلرَّحۡمَٰنُ وُدّٗا ﴿٩٦﴾

९६) निःसन्देह जसले ईमान ल्याएका छन् र असल कर्म गरे, शीघ्र नै अल्लाहले तिनीहरूको निम्ति प्रेम उत्पन्न गरी दिने छ ।

فَإِنَّمَا يَسَّرۡنَٰهُ بِلِسَانِكَ لِتُبَشِّرَ بِهِ ٱلۡمُتَّقِينَ وَتُنذِرَ بِهِۦ قَوۡمٗا لُّدّٗا ﴿٩٧﴾

९७) हामीले यस कुरआनलाई तपाईको भाषामा निकै सरल बनाई दिएका छौं, ताकि यसबाट तपाईले डर मान्नेहरूलाई शुभ सूचना दिनुस् र झगडा गर्नेहरूलाई यसबाट डराउनुस् ।

وَكَمۡ أَهۡلَكۡنَا قَبۡلَهُم مِّن قَرۡنٍ هَلۡ تُحِسُّ مِنۡهُم مِّنۡ أَحَدٍ أَوۡ تَسۡمَعُ لَهُمۡ رِكۡزَۢا ﴿٩٨﴾

९८) हामीले उनीहरू भन्दा अघिका धेरै समुदायहरूलाई नष्ट गरिसकेका छौं । के तिनीहरू मध्ये कुनै एकको बारेमा तिमी चाल पाउँछौ अथवा तिनीहरूको आवाज तिम्रो कानहरूले सुन्दछन् ?

## सूरतु ताहा-२०




सूरतु ताहा मक्की हो, यसमा १३५ आयतहरू र ८ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) ताहा

طٰهٰ ①

२) (हे मुहम्मद !) हामीले कुरआन तपाईं माथि यस कारण अवतरित गरेका होइनौं कि तपाईं दु:खमा पर्नुस् ।

مَآ اَنْزَلْنَا عَلَيْكَ الْقُرْاٰنَ لِتَشْقٰٓى ②

३) अपितु उसको नसहितको निम्ति जो अल्लाहसँग डर्छ ।

اِلَّا تَذْكِرَةً لِّمَنْ يَّخْشٰى ③

४) यसको अवतरण उसको तर्फबाट भएको हो जसले धरती र उच्च आकाशहरूको सृष्टि गरेको छ ।

تَنْزِيْلًا مِّمَّنْ خَلَقَ الْاَرْضَ وَالسَّمٰوٰتِ الْعُلٰى ④

५) जो असीम दयालु हो, जो उच्चासन (अर्श) माथि उच्च छ ।

اَلرَّحْمٰنُ عَلَى الْعَرْشِ اسْتَوٰى ⑤

६) जे जति आकाशहरूमा छ र जे जति धरतीमा छ र जे जति यी दुवैको बीचमा छ, र जे जति धरतीको (माटो) मुनि छ, सबै उसैको हो ।

لَهٗ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ وَمَا بَيْنَهُمَا وَمَا تَحْتَ الثَّرٰى ⑥

७) तिमी चाहे ठूलो स्वरमा पुकार अथवा (सानो स्वरमा) उसले त लुकेको कुरा र अत्यन्त गोप्य कुरा पनि जान्दछ ।

وَاِنْ تَجْهَرْ بِالْقَوْلِ فَاِنَّهٗ يَعْلَمُ السِّرَّ وَاَخْفٰى ⑦

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ۭ لَهُ الْاَسْمَاۗءُ الْحُسْنٰى ⑧

८) उही अल्लाह हो, जस बाहेक अरु कोही सत्य पूज्य छैन। उसका नामहरू धेरै राम्रा छन्।

وَهَلْ اَتٰىكَ حَدِيْثُ مُوْسٰى ⑨

९) तपाईलाई मूसा (अ.) को घटना पनि थाहा छ ?

اِذْ رَاٰ نَارًا فَقَالَ لِاَهْلِهِ امْكُثُوْٓا اِنِّىْٓ اٰنَسْتُ نَارًا لَّعَلِّىْٓ اٰتِيْكُمْ مِّنْهَا بِقَبَسٍ اَوْ اَجِدُ عَلَى النَّارِ هُدًى ⑩

१०) जबकि उनले आगो देखेर आफ्नो घरवालासित भने कि तिमी केही बेर पर्ख मैले आगो देखेको छु। धेरै सम्भव छ कि म त्यसबाट बलिराखेको एउटा अगुल्टो ल्याउन सकूँ वा आगोको ठाउँमा बाटो थाहा पाउन सकूँ।

فَلَمَّآ اَتٰىهَا نُوْدِيَ يٰمُوْسٰى ⑪

११) जब उनी त्यहाँ पुगे तब आवाज आयो हे मूसा !

اِنِّىْٓ اَنَا رَبُّكَ فَاخْلَعْ نَعْلَيْكَ ۚ اِنَّكَ بِالْوَادِ الْمُقَدَّسِ طُوًى ⑫

१२) निःसन्देह म नै तेरो पालनकर्ता हूँ। आफ्नो जुत्ता फुकालिदेऊ। तिमी पवित्र घाटी 'तुवा' मा छौ।

وَاَنَا اخْتَرْتُكَ فَاسْتَمِعْ لِمَا يُوْحٰى ⑬

१३) र मैले तिमीलाई रोजीसकेको छु। अब जे (वह्य) अल्लाहको सन्देश गरिन्छ। त्यसलाई राम्ररी सुन।

اِنَّنِيْٓ اَنَا اللّٰهُ لَآ اِلٰهَ اِلَّآ اَنَا فَاعْبُدْنِيْ ۙ وَاَقِمِ الصَّلٰوةَ لِذِكْرِيْ ⑭

१४) निःसन्देह म नै अल्लाह हूँ, म बाहेक अरु कोही सत्य पूज्य छैन, तसर्थ, तिमीले मेरो उपासना गर्ने गर र मेरो स्मरणको निम्ति नमाज पढ्ने गर।

اِنَّ السَّاعَةَ اٰتِيَةٌ اَكَادُ اُخْفِيْهَا لِتُجْزٰى كُلُّ نَفْسٍۢ بِمَا تَسْعٰى ⑮

१५) निश्चय नै कियामत आउनेवाला छ, जसलाई म गोप्य राख्न चाहन्छु ताकि प्रत्येक मानिसलाई त्यो

प्रतिफल प्रदान गरियोस् जसको उसले प्रयास गरेको छ ।

१६) अतः अब त्यसको विश्वासबाट तिमीलाई कुनै यस्तो व्यक्तिले नरोकोस् जसले कि यसमा विश्वास गर्दैन र आफ्नो इच्छाको पूर्तिमा लागेको छ, अन्यथा तिमी नष्ट भइहाल्नेछौ ।

فَلَا يَصُدَّنَّكَ عَنْهَا مَنْ لَّا يُؤْمِنُ بِهَا وَاتَّبَعَ هَوٰىهُ فَتَرْدٰى ﴿١٦﴾

१७) हे मूसा "तिम्रो यस दायाँ हातमा के छ" ?

وَمَا تِلْكَ بِيَمِيْنِكَ يٰمُوْسٰى ﴿١٧﴾

१८) उसले जवाफ दियो कि "यो मेरो लट्ठी हो । म यसमा अडेस लगाउछु र यसबाट आफ्ना बाख्राहरूको निम्ति पातहरू झार्छु र यसबाट मेरा अन्य आवश्यकताहरू पनि पूरा हुन्छन् ।"

قَالَ هِيَ عَصَايَ ۚ اَتَوَكَّؤُا عَلَيْهَا وَاَهُشُّ بِهَا عَلٰى غَنَمِيْ وَلِيَ فِيْهَا مَاٰرِبُ اُخْرٰى ﴿١٨﴾

१९) आदेश दियो, "हे मूसा त्यसलाई हातबाट तल खसालिदेऊ" ।

قَالَ اَلْقِهَا يٰمُوْسٰى ﴿١٩﴾

२०) खसाल्ने बित्तिकै त्यो सर्प बनेर चल्न थाल्यो ।

فَاَلْقٰىهَا فَاِذَا هِيَ حَيَّةٌ تَسْعٰى ﴿٢٠﴾

२१) आदेश भयो "निर्भिक भई त्यसलाई समातिहाल, हामीले यसलाई त्यही पहिलेकै अवस्थामा ल्याइदिनेछौं" ।

قَالَ خُذْهَا وَلَا تَخَفْ ٚ سَنُعِيْدُهَا سِيْرَتَهَا الْاُوْلٰى ﴿٢١﴾

२२) र आफ्नो हात आफ्नो छेउमा राख, अनि त्यो बिना कुनै अवगुण चम्किदै अर्को चमत्कारको रूपमा निस्कनेछ ।

وَاضْمُمْ يَدَكَ اِلٰى جَنَاحِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوْٓءٍ اٰيَةً اُخْرٰى ﴿٢٢﴾

| | |
|---|---|
| २३) यो यसका लागि कि हामीले आफ्ना ठूला ठूला निशानीहरू तिमीलाई देखाउन चाहन्छौं । | لِنُرِيَكَ مِنْ ءَايَٰتِنَا ٱلْكُبْرَى ﴿٢٣﴾ |
| २४) अब तिमी फिरऔन कहाँ जाऊ उसले ठूलो उत्पात मचाई रहेको छ । | ٱذْهَبْ إِلَىٰ فِرْعَوْنَ إِنَّهُۥ طَغَىٰ ﴿٢٤﴾ |
| २५) (मूसा अलै. ले भने) मेरो पालनकर्ता मेरो छाती मेरो निम्ति खोलिदेऊ । | قَالَ رَبِّ ٱشْرَحْ لِى صَدْرِى ﴿٢٥﴾ |
| २६) र मेरो काम मेरो निम्ति सजिलो बनाइदेऊ । | وَيَسِّرْ لِىٓ أَمْرِى ﴿٢٦﴾ |
| २७) र मेरो भाषाको अप्ठ्यारोपना हटाइदेऊ । | وَٱحْلُلْ عُقْدَةً مِّن لِّسَانِى ﴿٢٧﴾ |
| २८) जसबाट मानिसहरू मेरो कुरा बुझ्न सकुन् । | يَفْقَهُوا۟ قَوْلِى ﴿٢٨﴾ |
| २९) र मेरा घरवालाहरू मध्ये एउटालाई मेरो मन्त्री बनाइदेऊ । | وَٱجْعَل لِّى وَزِيرًا مِّنْ أَهْلِى ﴿٢٩﴾ |
| ३०) मेरो भाइ हारूनालाई । | هَٰرُونَ أَخِى ﴿٣٠﴾ |
| ३१) उसबाट मेरो शक्ति सुदृढ गर । | ٱشْدُدْ بِهِۦٓ أَزْرِى ﴿٣١﴾ |
| ३२) र उसलाई मेरो काममा शामेल गराइदेऊ, | وَأَشْرِكْهُ فِىٓ أَمْرِى ﴿٣٢﴾ |
| ३३) जसबाट हामीले धेरै भन्दा धेरै तिम्रा गुणगान गरौं । | كَىْ نُسَبِّحَكَ كَثِيرًا ﴿٣٣﴾ |
| ३४) र तिमीलाई हामीले धेरै याद गरौं । | وَنَذْكُرَكَ كَثِيرًا ﴿٣٤﴾ |
| ३५) निश्चय नै तिमी हाम्रो राम्रो सँग देखभाल गर्नेवाला हौ । | إِنَّكَ كُنتَ بِنَا بَصِيرًا ﴿٣٥﴾ |
| ३६) अल्लाहबाट आदेश भयो, "मूसा" तिम्रो सबै प्रार्थना स्वीकार गरियो । | قَالَ قَدْ أُوتِيتَ سُؤْلَكَ يَٰمُوسَىٰ ﴿٣٦﴾ |

وَلَقَدْ مَنَنَّا عَلَيْكَ مَرَّةً أُخْرَىٰٓ ﴿٣٧﴾

३७) हामीले त तिमी माथि एकपटक अरु पनि ठूलो उपकार गरिसकेका छौं ।

إِذْ أَوْحَيْنَآ إِلَىٰٓ أُمِّكَ مَا يُوحَىٰٓ ﴿٣٨﴾

३८) जबकि हामीले तिम्री आमाको हृदयमा त्यो प्रेरणा दियौं जसको चर्चा अब गरिदै छ ।

أَنِ اقْذِفِيهِ فِي التَّابُوتِ فَاقْذِفِيهِ فِي الْيَمِّ
فَلْيُلْقِهِ الْيَمُّ بِالسَّاحِلِ يَأْخُذْهُ عَدُوٌّ لِّي وَعَدُوٌّ
لَّهُۥ ۚ وَأَلْقَيْتُ عَلَيْكَ مَحَبَّةً مِّنِّي ۚ وَلِتُصْنَعَ عَلَىٰ
عَيْنِيٓ ﴿٣٩﴾

३९) "कि उसलाई तिमीले सन्दुकमा राखेर समुद्रमा हालिदेऊ, त्यसपछि समुद्रले उसलाई किनारामा लगिदिन्छ ताकि उसलाई मेरो र उसको शत्रुले उठाइलिनेछ" । र मैले आफ्नो तर्फबाट तिमीलाई आफ्नो प्रेम प्रदान गर्‍यौं । र ताकि मेरो आँखाको अगाडि तिम्रो पालनपोषण होस् ।

إِذْ تَمْشِيٓ أُخْتُكَ فَتَقُولُ هَلْ أَدُلُّكُمْ عَلَىٰ مَن
يَكْفُلُهُۥ ۖ فَرَجَعْنَٰكَ إِلَىٰٓ أُمِّكَ كَيْ تَقَرَّ عَيْنُهَا
وَلَا تَحْزَنَ ۚ وَقَتَلْتَ نَفْسًا فَنَجَّيْنَٰكَ مِنَ الْغَمِّ
وَفَتَنَّٰكَ فُتُونًا ۚ فَلَبِثْتَ سِنِينَ فِيٓ أَهْلِ
مَدْيَنَ ثُمَّ جِئْتَ عَلَىٰ قَدَرٍ يَٰمُوسَىٰ ﴿٤٠﴾

४०) (स्मरण गर) जबकि तिम्री बहिनी गइराखेकी थिइन र भनिरहेकी थिइन: कि यदि तिमी भन्छौ भने त्यसको बारेमा म उसलाई बताई दिन्छु जसले उसको पालनपोषण गर्नेछ । यस उपायबाट हामीले फेरि तिमीलाई तिम्री आमाको पासमा पुर्‍याइदियौं ताकि उसको आँखा शीतल होउन् र उनी शोकाकुल नहोऊन्, र (यादगर) तिमीले एउटा व्यक्तिको हत्या गरिदिएका थियौ । तैपनि हामीले तिमीलाई दुःखबाट छुट्कारा दिलायौं र हामीले तिमीलाई राम्ररी जाँच्यौ ।

अनि तिमी कैयौं वर्षसम्म मदयनका मानिसहरूसँग बसिराख्यौ, फेरि तिमी अल्लाहको अनुकम्पाले हे मूसा निर्धारित समयमा आइपुग्यौ ।

وَاصْطَنَعْتُكَ لِنَفْسِي ﴿٤١﴾

४१) र मैले तिमीलाई विशेष आफ्नो लागि मनपराएको छु ।

اِذْهَبْ أَنْتَ وَأَخُوكَ بِآيَاتِي وَلَا تَنِيَا فِي ذِكْرِي ﴿٤٢﴾

४२) अब तिमी आफ्नो भाइसहीत मेरा निशानीहरू साथमा लिएर जाऊ, र याद रहोस् मेरो स्मरणमा ढिलासुस्ती नगर्नु ।

اِذْهَبَا إِلَىٰ فِرْعَوْنَ إِنَّهُ طَغَىٰ ﴿٤٣﴾

४३) तिमी दुवै फिरऔनको पासमा जाऊ । त्यसले गम्भीर अवज्ञा गरेको छ ।

فَقُولَا لَهُ قَوْلًا لَيِّنًا لَعَلَّهُ يَتَذَكَّرُ أَوْ يَخْشَىٰ ﴿٤٤﴾

४४) त्यसलाई नम्रतापूर्वक सम्झाऊ, ताकि सम्भव छ त्यसले सम्झिहालोस् वा डरी हालोस् ।

قَالَا رَبَّنَا إِنَّنَا نَخَافُ أَنْ يَفْرُطَ عَلَيْنَا أَوْ أَنْ يَطْغَىٰ ﴿٤٥﴾

४५) दुवैले भने “हे हाम्रो पालनकर्ता । हामीलाई यसको भय छ कि कतै त्यसले हामी माथि कुनै अत्याचार नगरोस् अथवा उसको उदण्डता बढेर नजाओस् ।”

قَالَ لَا تَخَافَا إِنَّنِي مَعَكُمَا أَسْمَعُ وَأَرَىٰ ﴿٤٦﴾

४६) (अल्लाहको) आदेश भयो तिमी अलिकति पनि नडराऊ, म तिम्रो साथमा छु र सुन्दछु र देख्दछु ।

فَأْتِيَاهُ فَقُولَا إِنَّا رَسُولَا رَبِّكَ فَأَرْسِلْ مَعَنَا بَنِي إِسْرَائِيلَ وَلَا تُعَذِّبْهُمْ قَدْ جِئْنَاكَ بِآيَةٍ مِنْ رَبِّكَ وَالسَّلَامُ عَلَىٰ مَنِ اتَّبَعَ الْهُدَىٰ ﴿٤٧﴾

४७) तिमी उसको पासमा जाऊ र भनः ‘कि हामी तिम्रो पालनकर्ताका संदेष्टा हौं । तिमीले हाम्रो साथमा इस्राईलका सन्तानलाई पठाइदेऊ र

उनीहरूलाई यातना न देऊ । हामी तिम्रो पासमा तिम्रो पालनहारका निशानीहरू लिएर आएका छौं । र जसले सही मार्गदर्शनको कुरा मान्दछ । त्यसैलाई सलामती प्राप्त हुनेछ ।

४८) हामीतिर यो "वह्य" (अल्लाहका प्रकाशना) आएको छ कि जसले त्यसलाई झुट्ठो भन्छ र विमुख हुन्छ, त्यसको निम्ति यातना तयार छ ।

إِنَّا قَدْ أُوحِيَ إِلَيْنَا أَنَّ الْعَذَابَ عَلَىٰ مَن كَذَّبَ وَتَوَلَّىٰ ﴿٤٨﴾

४९) फिरऔनले सोध्यो कि, हे मूसा (अलै) तिमी दुवैको पालनहार को हो ?

قَالَ فَمَن رَّبُّكُمَا يَا مُوسَىٰ ﴿٤٩﴾

५०) उसले(मूसाले) जवाफ दिए कि हाम्रो पालनहार त्यो हो जसले हरेकलाई एउटा विशेष रूप, आकार प्रदान गऱ्यो र मार्ग दर्शन गरायो ।

قَالَ رَبُّنَا الَّذِي أَعْطَىٰ كُلَّ شَيْءٍ خَلْقَهُ ثُمَّ هَدَىٰ ﴿٥٠﴾

५१) उसले भन्यो कि, ठीक छ यो त बताऊ कि पहिलो पिढीहरूको अवस्था कस्तो हुनेवाला छ ।

قَالَ فَمَا بَالُ الْقُرُونِ الْأُولَىٰ ﴿٥١﴾

५२) जवाफ दिए कि "त्यसको ज्ञान मेरो पालनहारको पासमा किताबमा सुरक्षित छ, मेरो पालनहारबाट न गलती हुन्छ र न त ऊ भूल गर्छ" ।

قَالَ عِلْمُهَا عِندَ رَبِّي فِي كِتَابٍ ۖ لَّا يَضِلُّ رَبِّي وَلَا يَنسَى ﴿٥٢﴾

५३) उसैले तिम्रो निम्ति धर्तीलाई ओछ्यान बनायो र त्यसमा तिम्रो निम्ति मार्गहरू निकालेको छ र आकाशबाट पानी पनि उसैले बर्साउँछ । फेरि हामीले त्यस

الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ مَهْدًا وَسَلَكَ لَكُمْ فِيهَا سُبُلًا وَأَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَخْرَجْنَا بِهِ أَزْوَاجًا مِّن نَّبَاتٍ شَتَّىٰ ﴿٥٣﴾

पानीबाट विभिन्न प्रकारका बोट विरुवाहरू उमार्छौं ।

كُلُوا وَارْعَوْا أَنْعَامَكُمْ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّأُولِي النُّهَىٰ ﴿٥٤﴾

५४) तिमी स्वयम् खाऊ र आफ्ना जनावरहरूलाई पनि चराऊ । निःसन्देह यसमा बुद्धिमानहरूका लागि (धेरै) निशानीहरू छन् ।

مِنْهَا خَلَقْنَاكُمْ وَفِيهَا نُعِيدُكُمْ وَمِنْهَا نُخْرِجُكُمْ تَارَةً أُخْرَىٰ ﴿٥٥﴾

५५) यसै धरतीबाट हामीले तिम्रो सृष्टि गर्‍यौं र यसैमा तिमीलाई फेरि फर्काउने छौं र यसैबाट अर्कोपल्ट तिमीहरू सबैलाइ निकाल्ने छौं ।

وَلَقَدْ أَرَيْنَاهُ آيَاتِنَا كُلَّهَا فَكَذَّبَ وَأَبَىٰ ﴿٥٦﴾

५६) हामीले फिरऔनलाई आफ्ना सबै निशानीहरू देखायौं तर तैपनि उसले झूठो भन्यो र इन्कार गर्‍यो ।

قَالَ أَجِئْتَنَا لِتُخْرِجَنَا مِنْ أَرْضِنَا بِسِحْرِكَ يَا مُوسَىٰ ﴿٥٧﴾

५७) भन्न थाल्यो कि हे मूसा के तिमी हाम्रो पासमा यसकारण आएका हौ ताकि आफ्नो जादूको शक्तिले हामीलाई हाम्रो देशबाट निकालिदेऊ ।

فَلَنَأْتِيَنَّكَ بِسِحْرٍ مِّثْلِهِ فَاجْعَلْ بَيْنَنَا وَبَيْنَكَ مَوْعِدًا لَّا نُخْلِفُهُ نَحْنُ وَلَا أَنتَ مَكَانًا سُوًى ﴿٥٨﴾

५८) ठीक छ हामीले पनि तिम्रो दाँजोमा यस्तै जादू ल्याउने छौं तसर्थ हाम्रो र आफ्नो बीचमा एउटा समय निर्धारित गरिहाल, ताकि न त हामीले त्यसको विपरित गरौं न त तिमी, र यो प्रतिस्पर्धा एउटा सफा फाँटमा (मैदान) हुनेछ ।

قَالَ مَوْعِدُكُمْ يَوْمُ الزِّينَةِ وَأَن يُحْشَرَ النَّاسُ ضُحًى ﴿٥٩﴾

५९) मूसा (अलै)ले भने उत्सवको दिनको वचन छ र यो कि मानिसहरू सूर्योदय पछि एकत्रित भइहालुन् ।''

६०) अनि फिरऔन फर्केर गयो र आफ्ना सर-सामान जम्मा पारी फेरि आयो ।

فَتَوَلّٰى فِرْعَوْنُ فَجَمَعَ كَيْدَهٗ ثُمَّ اَتٰى ﴿٦٠﴾

६१) मूसा (अलै)ले ती (जादूगरहरू) सित भने कि अफशोच तिम्रो दुर्भाग्य छ, अल्लाहको बारेमा असत्य वा मनगढन्त कुरा नभन अन्यथा उसले तिमीलाई सजाय गरेर नष्ट पारिदिनेछ । यादगर जसले असत्य र मनगढन्ते कुरा गऱ्यो त्यो कहिले सफल हुने छैन ।

قَالَ لَهُمْ مُّوْسٰى وَيْلَكُمْ لَا تَفْتَرُوْا عَلَى اللّٰهِ كَذِبًا فَيُسْحِتَكُمْ بِعَذَابٍ ۚ وَقَدْ خَابَ مَنِ افْتَرٰى ﴿٦١﴾

६२) तिनीहरू एक आपसमा सरसल्लाह गर्दै अलग-अलग रायमा विभाजित भएर बिस्तारै कानेखुसी गर्न थाले ।

فَتَنَازَعُوْٓا اَمْرَهُمْ بَيْنَهُمْ وَاَسَرُّوا النَّجْوٰى ﴿٦٢﴾

६३) भन्न थाले "यी दुवै मात्र जादूगर हुन्, र चाहन्छन् कि आफ्नो जादूको बलले तिमीलाई तिम्रो राज्यबाट बाहिर निकालिदेउन् । र तिम्रो उत्तम धर्मलाई तहस नहस पारी देउन् ।

قَالُوْٓا اِنْ هٰذٰنِ لَسٰحِرٰنِ يُرِيْدٰنِ اَنْ يُّخْرِجٰكُمْ مِّنْ اَرْضِكُمْ بِسِحْرِهِمَا وَيَذْهَبَا بِطَرِيْقَتِكُمُ الْمُثْلٰى ﴿٦٣﴾

६४) अत: तिमी पनि आफनो कुनै उपाय बाँकी नराख अनि पंक्तिवद्ध भएर आऊ । आज जो प्रभावी भयो, उसैले सफलता पाउँछ ।

فَاَجْمِعُوْا كَيْدَكُمْ ثُمَّ ائْتُوْا صَفًّا ۚ وَقَدْ اَفْلَحَ الْيَوْمَ مَنِ اسْتَعْلٰى ﴿٦٤﴾

६५) तिनीहरूले भने: "हे मूसा या त तिमीले पहिला चाल फ्याँक-वा हामीले पहिले फ्याँक्छौं ।"

قَالُوْا يٰمُوْسٰٓى اِمَّآ اَنْ تُلْقِيَ وَاِمَّآ اَنْ نَّكُوْنَ اَوَّلَ مَنْ اَلْقٰى ﴿٦٥﴾

६६) मूसा (अलै) ले उत्तर दिए कि: "होइन बरु तिमीले नै पहिला

قَالَ بَلْ اَلْقُوْا ۚ فَاِذَا حِبَالُهُمْ وَعِصِيُّهُمْ يُخَيَّلُ اِلَيْهِ مِنْ سِحْرِهِمْ اَنَّهَا تَسْعٰى ﴿٦٦﴾

फ्याँक ।" अब त मूसा (अलै) लाई यो भान हुन थाल्यो कि उनका डोरी र लट्ठीहरू उनको जादूको जोडले यताउता दगुरिराखेका छन् ।

فَأَوْجَسَ فِي نَفْسِهِ خِيفَةً مُّوسَىٰ ﴿٦٧﴾

६७) (त्यस वखत) मूसा (अलै) ले आफ्नो हृदयमा भय महसूस गरे ।

قُلْنَا لَا تَخَفْ إِنَّكَ أَنتَ الْأَعْلَىٰ ﴿٦٨﴾

६८) हामीले भन्यौं, केही भय नगर, निःसन्देह तिमी नै प्रभावी हुने छौ ।

وَأَلْقِ مَا فِي يَمِينِكَ تَلْقَفْ مَا صَنَعُوا ۖ إِنَّمَا صَنَعُوا كَيْدُ سَاحِرٍ ۖ وَلَا يُفْلِحُ السَّاحِرُ حَيْثُ أَتَىٰ ﴿٦٩﴾

६९) र जुन कुरो (लट्ठी) तिम्रो दाहिने हातमा छ त्यसलाई फ्याँकिदेऊ, उनीहरूले जेजति बनाएका छन् त्यो सबैलाई निग्ली हाल्छ । जेजति तिनीहरूले बनाएका छन्, (यो त) जादूगरहरूको हत्कण्डा हो र जादूगरहरू जहाँबाट पनि आउनेछन् सफल हुनेछैनन् ।

فَأُلْقِيَ السَّحَرَةُ سُجَّدًا قَالُوا آمَنَّا بِرَبِّ هَارُونَ وَمُوسَىٰ ﴿٧٠﴾

७०) अब त सबै जादूगरहरू नतमस्तक भई ढोगिहाले र ठूलो स्वरमा भने कि हामीले त हारून र मूसाको पालनकर्तामाथि ईमान ल्यायौं ।

قَالَ آمَنتُمْ لَهُ قَبْلَ أَنْ آذَنَ لَكُمْ ۖ إِنَّهُ لَكَبِيرُكُمُ الَّذِي عَلَّمَكُمُ السِّحْرَ ۖ فَلَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ خِلَافٍ وَلَأُصَلِّبَنَّكُمْ فِي جُذُوعِ النَّخْلِ وَلَتَعْلَمُنَّ أَيُّنَا أَشَدُّ عَذَابًا وَأَبْقَىٰ ﴿٧١﴾

७१) फिरऔनले भन्न थाल्यो कि के मेरो अनुमति बिना नै तिमीहरूले उसमाथि ईमान ल्याई हाल्यौ ?। निःसन्देह यही तिम्रो प्रमुख हो जसले तिमीलाई जादू सिखाएको छ, ठीक छ, अब म तिम्रा हात र खुट्टा उल्टा-सीधा कटाएर र तिमीहरूलाई खजूरको रुखमा फाँसीमा झुण्ड्याई दिनेछु ।

र तिमीहरूलाई अवश्य थाहा भइहाल्ने छ कि हामी मध्ये कसको यातना धेरै कठोर र स्थायी छ ।''

قَالُوۡا لَنۡ نُّؤۡثِرَكَ عَلٰى مَا جَآءَنَا مِنَ الۡبَيِّنٰتِ وَالَّذِىۡ فَطَرَنَا فَاقۡضِ مَاۤ اَنۡتَ قَاضٍؕ اِنَّمَا تَقۡضِىۡ هٰذِهِ الۡحَيٰوةَ الدُّنۡيَا ؕ‏ ﴿٧٢﴾

७२) उनीहरूले भने कि जुन प्रमाणहरू हाम्रो सामु आइपुगेका छन्, तिनीहरूको मद्देनजर जसले हामीलाई सृष्टि गरेको छ, त्यस अल्लाह विरुद्ध हामीले तिमीलाई कहिल्यै प्राथमिकता दिने छैनौं, तसर्थ अब तिमीले जे गर्न चाहन्छौ गरीहाल । र तिमी जुन आदेश दिन सक्छौ, त्यो मात्र यसै सांसारिक जिन्दगीमा दिन सक्छौ ।

اِنَّاۤ اٰمَنَّا بِرَبِّنَا لِيَـغۡفِرَ لَـنَا خَطٰيٰنَا وَمَاۤ اَكۡرَهۡتَنَا عَلَيۡهِ مِنَ السِّحۡرِؕ وَاللّٰهُ خَيۡرٌ وَّ اَبۡقٰى‏ ﴿٧٣﴾

७३) हामीले आफ्नो पालनकर्तामाथि यस आशामा ईमान ल्यायौं कि उसले हाम्रा पापहरूलाई माफ गरोस् र (त्यो पनि) जुन कि तिमीले हामीबाट जबरजस्ती जादू गरायौ । र अल्लाह नै उत्तम र सधैं रही रहनेछ ।

اِنَّهٗ مَنۡ يَّاۡتِ رَبَّهٗ مُجۡرِمًا فَاِنَّ لَهٗ جَهَـنَّمَؕ لَا يَمُوۡتُ فِيۡهَا وَلَا يَحۡيٰى‏ ﴿٧٤﴾

७४) कुरो यो छ कि जो कोही अल्लाहको सामु पापी भएर आउनेछ उसको निम्ति नर्क छ, जसमा न मर्नु न त बाँच्नु हुनेछ ।

وَمَنۡ يَّاۡتِهٖ مُؤۡمِنًا قَدۡ عَمِلَ الصّٰلِحٰتِ فَاُولٰٓـئِكَ لَهُمُ الدَّرَجٰتُ الۡعُلٰى ۙ‏ ﴿٧٥﴾

७५) र जो उसको सामु ईमानवाला भएर आउनेछ र उसले कर्म पनि असल गरेको छ त यस्ताको लागि उच्च दर्जाहरू छन् ।

جَنّٰتُ عَدۡنٍ تَجۡرِىۡ مِنۡ تَحۡتِهَا الۡاَنۡهٰرُ خٰلِدِيۡنَ فِيۡهَا ؕ وَذٰ لِكَ جَزٰٓؤُا مَنۡ تَزَكّٰى ﴿٧٦﴾

७६) सधैं बासको निम्ति स्वर्गका बगैंचा जसका मुनि धरातलमा नहरहरू

बगिराखेका छन्, सधैं तिनीहरू त्यहाँ बास गर्नेछन् । र यो नै त्यस्तो प्रत्येक व्यक्तिको पुरस्कार हो जो पवित्र भयो ।

وَلَقَدْ أَوْحَيْنَآ إِلَىٰ مُوسَىٰٓ أَنْ أَسْرِ بِعِبَادِى فَاضْرِبْ لَهُمْ طَرِيقًا فِى الْبَحْرِ يَبَسًا لَّا تَخَٰفُ دَرَكًا وَلَا تَخْشَىٰ ﴿٧٧﴾

७७) हामीले मूसा (अलै) तिर वह्य (सन्देश) पठायौं कि हाम्रा भक्तहरूलाई रातैरात लगिहाल, अनि तिनीहरूको निम्ति समुद्रमा लट्ठी हानी बाटो बनाइहाल, त्यसपछि तिमीलाई न कसैले आइसमात्ने भय हुनेछ र नत (डुब्ने) डर ।

فَأَتْبَعَهُمْ فِرْعَوْنُ بِجُنُودِهِۦ فَغَشِيَهُم مِّنَ الْيَمِّ مَا غَشِيَهُمْ ﴿٧٨﴾

७८) फिरऔनले आफ्नो लाव लश्करका साथ तिनीहरूलाई पछ्यायो तब समुद्रका तरङ्गहरू तिनीहरूलाई छोपिहाले (डुबाइहाले)

وَأَضَلَّ فِرْعَوْنُ قَوْمَهُۥ وَمَا هَدَىٰ ﴿٧٩﴾

७९) र फिरऔनले आफ्ना समुदायलाई पथभ्रष्ट गऱ्यो र सही बाटो देखाएन ।

يَٰبَنِىٓ إِسْرَٰٓءِيلَ قَدْ أَنجَيْنَٰكُم مِّنْ عَدُوِّكُمْ وَوَٰعَدْنَٰكُمْ جَانِبَ الطُّورِ الْأَيْمَنَ وَنَزَّلْنَا عَلَيْكُمُ الْمَنَّ وَالسَّلْوَىٰ ﴿٨٠﴾

८०) हे बनी इस्राईल हेर, हामीले तिमीलाई तिम्रो शत्रुबाट छुटकारा दिलायौं र तिमीसित तूर पर्वतको दाहिनेतिरको वचन दियौं र तिमी माथि "मन्न र सलवा" उताऱ्यौं ।

كُلُوا۟ مِن طَيِّبَٰتِ مَا رَزَقْنَٰكُمْ وَلَا تَطْغَوْا۟ فِيهِ فَيَحِلَّ عَلَيْكُمْ غَضَبِى ۖ وَمَن يَحْلِلْ عَلَيْهِ غَضَبِى فَقَدْ هَوَىٰ ﴿٨١﴾

८१) तिमीले हामीबाट प्रदान गरिएको पवित्र कुराहरू खाऊ, र यसमा सीमा न नाघ, अन्यथा तिमी माथि मेरो प्रकोप पर्नेछ, र जसमाथि मेरो प्रकोप पऱ्यो त्यो निःसन्देह बर्बाद भयो ।

| | |
|---|---|
| ८२) र त्यो जसले प्रायश्चित गऱ्यो र ईमान ल्यायो र असल कर्म गऱ्यो अनि असल मार्गमा हिड्दै गऱ्यो, त्यसको लागि निश्चय नै म अत्यन्त क्षमाशील छु । | وَإِنِّي لَغَفَّارٌ لِّمَن تَابَ وَآمَنَ وَعَمِلَ صَالِحًا ثُمَّ اهْتَدَىٰ ﴿٨٢﴾ |
| ८३) हे मूसा तिमीलाई आफ्नो कौम छाडी शीघ्र आउनमा कुन कुरोले उक्सायो । | وَمَا أَعْجَلَكَ عَن قَوْمِكَ يَا مُوسَىٰ ﴿٨٣﴾ |
| ८४) भने कि उनीहरू पनि मेरो पछि पछि आइराखेका छन् र हे मेरो पालनकर्ता मैले तिमीतिर आउनमा शीघ्रता यसकारणले गरें ताकि तिमी प्रसन्न होऊ । | قَالَ هُمْ أُولَاءِ عَلَىٰ أَثَرِي وَعَجِلْتُ إِلَيْكَ رَبِّ لِتَرْضَىٰ ﴿٨٤﴾ |
| ८५) आदेश भयोः "हामीले तिमी पछि तिम्रो कौमलाई परीक्षामा पाऱ्यौं । र सामरीले तिनीहरूलाई पथभ्रष्ट गरिहाल्यो ।" | قَالَ فَإِنَّا قَدْ فَتَنَّا قَوْمَكَ مِن بَعْدِكَ وَأَضَلَّهُمُ السَّامِرِيُّ ﴿٨٥﴾ |
| ८६) अनि मूसा (अ.) क्रोध र दुःखको अवस्थामा आफ्नो समुदायतिर फर्केर आए र भन्न थाले कि हे मेरो समुदायका मानिसहरू के तिम्रो पालनकर्ताले तिमीलाई राम्रो वचन दिएको थिएन ?। के उसको तर्फबाट आउने मद्दत तिमीलाई लामो प्रतित भयो वा तिमीले चाह्यौ कि तिमीमाथि तिम्रो पालनकर्ताको तर्फबाट प्रकोप परोस ? र (यसैकारणले) तिमीले मसित जुन वाचा गरेका थियौ त्यसको उल्लंघन गऱ्यौ । | فَرَجَعَ مُوسَىٰ إِلَىٰ قَوْمِهِ غَضْبَانَ أَسِفًا ۚ قَالَ يَا قَوْمِ أَلَمْ يَعِدْكُمْ رَبُّكُمْ وَعْدًا حَسَنًا ۚ أَفَطَالَ عَلَيْكُمُ الْعَهْدُ أَمْ أَرَدتُّمْ أَن يَحِلَّ عَلَيْكُمْ غَضَبٌ مِّن رَّبِّكُمْ فَأَخْلَفْتُم مَّوْعِدِي ﴿٨٦﴾ |

८७) तिनीहरूले जवाफ दिए कि "हामीले आफ्नो खुशीले तपाईंसित गरेको वाचाको उल्लंघन गरेका होइनौं । बरु समुदायका आभूषणहरूको जुन् बोझ उठाएका थियौं, हामीले त्यसलाई आगोमा फ्याँकिदियौं र यस्तै सामरीले पनि गऱ्यो ।"

قَالُوا مَا أَخْلَفْنَا مَوْعِدَكَ بِمَلْكِنَا وَلَٰكِنَّا حُمِّلْنَا أَوْزَارًا مِّن زِينَةِ الْقَوْمِ فَقَذَفْنَاهَا فَكَذَٰلِكَ أَلْقَى السَّامِرِيُّ ﴿٨٧﴾

८८) अनि त्यसले तिनीहरूको निम्ति एउटा बाछो निकालेर उभ्यायो अर्थात बाछोको आकृति जसको कि गाईको जस्तो आवाज पनि थियो अनि भन्न थाले कि यही तिम्रो पूजनीय हो ? र मूसा (अलै) को पनि पूज्य तर मूसाले बिर्सिसकेको छ ।

فَأَخْرَجَ لَهُمْ عِجْلًا جَسَدًا لَّهُ خُوَارٌ فَقَالُوا هَٰذَا إِلَٰهُكُمْ وَإِلَٰهُ مُوسَىٰ فَنَسِيَ ﴿٨٨﴾

८९) के यी पथ विचलित मानिसहरूले यो पनि देख्दैनन् कि त्यसले न कुनै उत्तर दिन्छ र नत उसलाई तिनीहरूको हानि र लाभको कुनै अधिकार प्राप्त छ ।

أَفَلَا يَرَوْنَ أَلَّا يَرْجِعُ إِلَيْهِمْ قَوْلًا وَلَا يَمْلِكُ لَهُمْ ضَرًّا وَلَا نَفْعًا ﴿٨٩﴾

९०) र हारून (अ.) ले उनीहरूसित पहिले नै भनिदिएका थिए कि हे मेरो समुदायका मानिसहरू यस बाछोबाट त मात्र तिमीहरूको परीक्षा गरिएको हो, र तिम्रो वास्तविक पालनकर्ता त अल्लाह रहमान नै हो, तसर्थ तिमी सबैले मेरो अनुशरण गर र मेरो कुरा मान्दै गर ।

وَلَقَدْ قَالَ لَهُمْ هَارُونُ مِن قَبْلُ يَا قَوْمِ إِنَّمَا فُتِنتُم بِهِ ۖ وَإِنَّ رَبَّكُمُ الرَّحْمَٰنُ فَاتَّبِعُونِي وَأَطِيعُوا أَمْرِي ﴿٩٠﴾

قَالُوْا لَنْ نَّبْرَحَ عَلَيْهِ عٰكِفِيْنَ حَتّٰى يَرْجِعَ اِلَيْنَا مُوْسٰى ﴿٩١﴾

९१) तिनीहरूले जवाफ दिए कि जबसम्म मूसा (अलै) हाम्रो पासमा आउँदैनन् हामी त त्यसैको पूजामा दृढ रहनेछौं ।

قَالَ يٰهٰرُوْنُ مَا مَنَعَكَ اِذْ رَاَيْتَهُمْ ضَلُّوْٓا ﴿٩٢﴾

९२) अनि मूसा (अलै) ले भने कि हे हारून जब तिमीले देख्यौ कि यिनीहरू पथभ्रष्ट भइरहेका छन् त कुन कुराले तिमीलाई रोकेको थियो ।

اَلَّا تَتَّبِعَنِ ۭ اَفَعَصَيْتَ اَمْرِيْ ﴿٩٣﴾

९३) कुन कुराले गर्दा तिमीले मेरो अनुशरण गरेनौ, के तिमीले पनि मेरो आदेशको उल्लंघन गर्‍यौ ?

قَالَ يَبْنَؤُمَّ لَا تَاْخُذْ بِلِحْيَتِيْ وَلَا بِرَاْسِيْ ۚ اِنِّيْ خَشِيْتُ اَنْ تَقُوْلَ فَرَّقْتَ بَيْنَ بَنِيْٓ اِسْرَاۗءِيْلَ وَلَمْ تَرْقُبْ قَوْلِيْ ﴿٩٤﴾

९४) हारून अलैहिस्सलामले भने: कि हे "मेरा आमाबाटै जन्मेको भाइ मेरो दाढी र कपाल नसमात्नुस्, म त यो कुराबाट डराएँ कि तपाईंले यो नभन्नुहोस् कि मैले बनी इस्राईलमा झगडा गराइदिएँ र तपाईंको कुरालाई ध्यान दिएन ।"

قَالَ فَمَا خَطْبُكَ يٰسَامِرِيُّ ﴿٩٥﴾

९५) (अनि सामरीसित) मूसा (अलै) ले भन्न थाले कि "सामरी" तिम्रो हाल के छ ?

قَالَ بَصُرْتُ بِمَا لَمْ يَبْصُرُوْا بِهٖ فَقَبَضْتُ قَبْضَةً مِّنْ اَثَرِ الرَّسُوْلِ فَنَبَذْتُهَا وَكَذٰلِكَ سَوَّلَتْ لِيْ نَفْسِيْ ﴿٩٦﴾

९६) उसले भन्यो कि मैले यस्तो कुरा देखें जुन कि अरुले देखेनन्, अनि मैले फरिश्ताको पदचिन्हबाट एक मुठ्ठी माटो लिइहालें, र त्यसमा (बाछोमा) हालिदिए र मलाई मेरो मनले यस कामलाई राम्रो भन्यो ।

قَالَ فَاذْهَبْ فَاِنَّ لَكَ فِي الْحَيٰوةِ اَنْ تَقُوْلَ لَا

९७) (मूसा (अलै) ले) भने, जाऊ तिमीलाई

مِسَاسَ ۖ وَإِنَّ لَكَ مَوْعِدًا لَّن تُخْلَفَهُ ۖ وَانظُرْ إِلَىٰ إِلَٰهِكَ الَّذِي ظَلْتَ عَلَيْهِ عَاكِفًا ۖ لَّنُحَرِّقَنَّهُ ثُمَّ لَنَنسِفَنَّهُ فِي الْيَمِّ نَسْفًا ﴿٩٧﴾

संसारको जिन्दगीमा यो सजाय छ कि तिमी भन्दै गर कि, "मलाई नछोउ ।" र तिम्रो निम्ति अर्को वचन पनि छ जुन तिमीबाट टार्न सकिनेछैन र जुन मअ्बूद (को पूजा) मा तिमी (कायम) थियौ, त्यसलाई पनि अब हेर, हामीले त्यसलाई जलाएर त्यस (को खरानी) उडाएर समुद्रमा छरिदिनेछौं ।

إِنَّمَا إِلَٰهُكُمُ اللَّهُ الَّذِي لَا إِلَٰهَ إِلَّا هُوَ ۚ وَسِعَ كُلَّ شَيْءٍ عِلْمًا ﴿٩٨﴾

९८) वास्तविक कुरा यो छ कि तिम्रो सत्य मअ्बूद अल्लाह नै हो, जस बाहेक अरु कोही सत्य पूजनीय छैन, उसको ज्ञान सबै कुरा माथि हावी छ ।

كَذَٰلِكَ نَقُصُّ عَلَيْكَ مِنْ أَنبَاءِ مَا قَدْ سَبَقَ ۚ وَقَدْ آتَيْنَاكَ مِن لَّدُنَّا ذِكْرًا ﴿٩٩﴾

९९) यस प्रकार हामीले तिमीलाई विगतका वृतान्त सुनाउँदैछौं, र हामीले निश्चिय नै तिमीलाई आफ्नो तर्फबाट एक मार्ग दर्शन प्रदान गरिसकेका छौं ।

مَّنْ أَعْرَضَ عَنْهُ فَإِنَّهُ يَحْمِلُ يَوْمَ الْقِيَامَةِ وِزْرًا ﴿١٠٠﴾

१००) जुन मानिस यसबाट विमुख हुन्छ, त्यसले कियामतको दिन आफ्नो गरुङ्गो बोझ उठाइ रहेने छ ।

خَالِدِينَ فِيهِ ۖ وَسَاءَ لَهُمْ يَوْمَ الْقِيَامَةِ حِمْلًا ﴿١٠١﴾

१०१) सधैं सोहीमा रहनेछन् । र यो बोझ कियामतको दिन तिनीहरूको निम्ति नराम्रो हुनेछ ।

يَوْمَ يُنفَخُ فِي الصُّورِ ۚ وَنَحْشُرُ الْمُجْرِمِينَ يَوْمَئِذٍ زُرْقًا ﴿١٠٢﴾

१०२) जुन दिन सूर फूँकिनेछ र हामीले पापीहरूलाई एकत्रित गर्नेछौं र (डरले) तिनीहरूका आँखा निला र पहेलो हुनेछन् ।

१०३) तिनीहरू आपसमा एक अर्कासित बिस्तारै भन्नेछन् कि हामी त (संसारमा) मात्र दश दिन बसेका थियौं ।

يَتَخَافَتُونَ بَيْنَهُمْ إِن لَّبِثْتُمْ إِلَّا عَشْرًا ﴿١٠٣﴾

१०४) जुन कुरा यिनीहरूले गर्नेछन्, त्यसको वास्तविकतासँग हामी राम्ररी परिचित छौं । त्यसबेला तिनीहरू मध्ये सबभन्दा राम्रो मार्गमा हिँड्नेवालाले भन्नेछ कि होइन, बरु एकदिन मात्र बसेका थियौं ।

نَّحْنُ أَعْلَمُ بِمَا يَقُولُونَ إِذْ يَقُولُ أَمْثَلُهُمْ طَرِيقَةً إِن لَّبِثْتُمْ إِلَّا يَوْمًا ﴿١٠٤﴾

१०५) तिनीहरू तपाईसित पहाडहरूको बारेमा सोध्छन्, भनीदिनुस् कि अल्लाहले तिनीहरूलाई साना-साना कणहरू पारी छरिदिनेछ ।

وَيَسْأَلُونَكَ عَنِ الْجِبَالِ فَقُلْ يَنسِفُهَا رَبِّي نَسْفًا ﴿١٠٥﴾

१०६) र धरतीलाई एउटा समतल मैदान बनाई छाडिदिनेछ ।

فَيَذَرُهَا قَاعًا صَفْصَفًا ﴿١٠٦﴾

१०७) जसमा तिमीले न कहिँ मोड (बाङ्गो टिङ्गो) देख्नेछौ नत ओरालो उकालो ।

لَّا تَرَىٰ فِيهَا عِوَجًا وَلَا أَمْتًا ﴿١٠٧﴾

१०८) जुन दिन मानिसहरू एउटा पुकार गर्नेवालाको पछि हिड्नेछन् र उसको अनुशरणबाट कोही कति पनि पन्छिन सक्ने छैन र अल्लाहको अगाडि सबै आवाजहरू दबिरहनेछन्, एउटा कानेखुसी बाहेक केही सुन्ने छैनौ ।

يَوْمَئِذٍ يَتَّبِعُونَ الدَّاعِيَ لَا عِوَجَ لَهُ ۖ وَخَشَعَتِ الْأَصْوَاتُ لِلرَّحْمَٰنِ فَلَا تَسْمَعُ إِلَّا هَمْسًا ﴿١٠٨﴾

१०९) त्यसदिन सिफारिश केही फाइदा पुऱ्याउने छैन, तर त्यस व्यक्ति बाहेक जसलाई अल्लाहले इजाज़त

يَوْمَئِذٍ لَّا تَنفَعُ الشَّفَاعَةُ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَرَضِيَ لَهُ قَوْلًا ﴿١٠٩﴾

प्रदान गर्दछ र उसको कुरा मन पराउनेछ ।

يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَلَا يُحِيطُونَ بِهِۦ عِلْمًا ﴿١١٠﴾

११०) जे जति उनीहरूको अगाडि पछाडि छ, अल्लाह त्यो सबै जान्दछ कुनै प्रणीको ज्ञान उसमाथि हावी हुन सक्दैन ।

وَعَنَتِ ٱلْوُجُوهُ لِلْحَيِّ ٱلْقَيُّومِ ۖ وَقَدْ خَابَ مَنْ حَمَلَ ظُلْمًا ﴿١١١﴾

१११) सबै अनुहारहरू त्यस अविनाशी सधैं कायम रहने वर्चस्वता सम्पन्न अल्लाहको अगाडि ब्याकुल भएर निहुरिएको हुनेछन् । निःसन्देह असफल त्यो भयो जसले अत्याचारको बोझ उठायो ।

وَمَن يَعْمَلْ مِنَ ٱلصَّـٰلِحَـٰتِ وَهُوَ مُؤْمِنٌ فَلَا يَخَافُ ظُلْمًا وَلَا هَضْمًا ﴿١١٢﴾

११२) र जसले असल काम गर्नेछ र मोमिन पनि हुनेछ, त त्यसलाई न अन्यायको डर हुनेछ र न नोक्सानीको ।

وَكَذَٰلِكَ أَنزَلْنَـٰهُ قُرْءَانًا عَرَبِيًّا وَصَرَّفْنَا فِيهِ مِنَ ٱلْوَعِيدِ لَعَلَّهُمْ يَتَّقُونَ أَوْ يُحْدِثُ لَهُمْ ذِكْرًا ﴿١١٣﴾

११३) यसप्रकार हामीले तिमीलाई अरबी कुरआनको रूपमा अवतरित गरेका छौं र हामीले यसमा विभिन्न प्रकारले चेतावनीहरू दिएका छौं ताकि मानिसहरू आत्मसंयमी बनुन् वा अल्लाहले उनीहरूको लागि सोच्ने सम्झने क्षमता उत्पन्न गरोस्,

فَتَعَـٰلَى ٱللَّهُ ٱلْمَلِكُ ٱلْحَقُّ ۗ وَلَا تَعْجَلْ بِٱلْقُرْءَانِ مِن قَبْلِ أَن يُقْضَىٰٓ إِلَيْكَ وَحْيُهُۥ ۖ وَقُل رَّبِّ زِدْنِى عِلْمًا ﴿١١٤﴾

११४) अतः अल्लाह गोरवपूर्ण र सच्चा सम्राट हो । कुरआनको "वह्य" जुन तिमीतिर पठाइन्छ, त्यो पूरा हुनुभन्दा अगाडि कुरआनलाई पढ्न्को निम्ति हतार गर्ने नगर र भनः "मेरो पालनकर्ता, मलाई ज्ञानमा अभिवृद्धि प्रदान गरोस्"

११५) हामीले यसभन्दा पहिला आदमलाई एउटा निश्चित आदेश दिएका थियौं तर उसले बिर्सिहाल्यो र हामीले त्यसमा कुनै संतोष र दृढता देखेनौं ।

وَلَقَدْ عَهِدْنَآ إِلَىٰٓ ءَادَمَ مِن قَبْلُ فَنَسِىَ وَلَمْ نَجِدْ لَهُۥ عَزْمًا ﴿١١٥﴾

११६) र जब हामीले फरिश्ताहरूलाई भन्यौं कि आदम (अलै)लाई ढोग तब इब्लीस बाहेक सबैले सज्दा गरे तर इब्लीसले सो गर्नबाट पूरै इन्कार गऱ्यो ।

وَإِذْ قُلْنَا لِلْمَلَٰٓئِكَةِ ٱسْجُدُوا۟ لِءَادَمَ فَسَجَدُوٓا۟ إِلَّآ إِبْلِيسَ أَبَىٰ ﴿١١٦﴾

११७) अनि हामीले भन्यौं कि हे आदम निश्चय नै यो तिमी र तिम्रो पत्नीको शत्रु हो । ध्यान गर यस्तो नहोस् कि यसले तिमी दुवैलाई जन्नतबाट निष्कासित गराइदेओस् र तिमी कष्टमा परिहाल ।

فَقُلْنَا يَٰٓـَٔادَمُ إِنَّ هَٰذَا عَدُوٌّ لَّكَ وَلِزَوْجِكَ فَلَا يُخْرِجَنَّكُمَا مِنَ ٱلْجَنَّةِ فَتَشْقَىٰٓ ﴿١١٧﴾

११८) यहाँ तिमीलाई यो आराम छ कि न तिमी भोको रहनेछौ न नाङ्गो रहने छौ ।

إِنَّ لَكَ أَلَّا تَجُوعَ فِيهَا وَلَا تَعْرَىٰ ﴿١١٨﴾

११९) र यो पनि कि न तिमी यहाँ तिर्खाएको रहनेछौ न त गरमीको कष्ट भोग्नेछौ ।

وَأَنَّكَ لَا تَظْمَؤُا۟ فِيهَا وَلَا تَضْحَىٰ ﴿١١٩﴾

१२०) त्यसपछि शैतानले उनलाई उक्सायो, भन्नथाल्यो: (हे आदम)के मैले तिमीलाई शाश्वत जीवनको वृक्षको बारेमा भनूँ र यस्तो राज्यको सम्बन्धमा जो कहिल्यै पुरानो हुँदैन ?"

فَوَسْوَسَ إِلَيْهِ ٱلشَّيْطَٰنُ قَالَ يَٰٓـَٔادَمُ هَلْ أَدُلُّكَ عَلَىٰ شَجَرَةِ ٱلْخُلْدِ وَمُلْكٍ لَّا يَبْلَىٰ ﴿١٢٠﴾

१२१) अन्ततः ती दुवैले त्यस वृक्षबाट केही खाइहाले, जसको परिणाम स्वरूप तिनीहरूका लुकाउने कुरा

فَأَكَلَا مِنْهَا فَبَدَتْ لَهُمَا سَوْءَٰتُهُمَا وَطَفِقَا يَخْصِفَانِ عَلَيْهِمَا مِن وَرَقِ ٱلْجَنَّةِ ۚ وَعَصَىٰٓ ءَادَمُ رَبَّهُۥ فَغَوَىٰ ﴿١٢١﴾

(गोप्या अंगहरू) तिनीहरूको अगाडि खुल्ला भइहाले र ती दुवैले आफना अंग जन्नतका पातहरूले छोप्न थाले र आदमले आफ्नो पालनकर्ताको (आदेशको) उल्लघंन गरे अनि मार्ग विचलित भइहाले ।

१२२) अनि उनको पालनकर्ताले उनलाई रोज्यो, र उनको प्रायश्चित स्वीकार गऱ्यो र उनको मार्गदर्शन, गऱ्यो ।

ثُمَّ اجْتَبٰهُ رَبُّهٗ فَتَابَ عَلَيْهِ وَهَدٰى ﴿١٢٢﴾

१२३) आदेश भयो तिमी दुवै यहाँबाट तल झर । तिमी आपसमा एक अर्काको शत्रु हौ । अब जहिले पनि मेरो तर्फबाट मार्गदर्शन जाने छ तब जसले मेरो मार्गदर्शनको अनुपालन गर्दछ । ऊ नत पथभ्रष्ट हुनेछ र न कष्टमा पर्नेछ ।

قَالَ اهْبِطَا مِنْهَا جَمِيْعًا بَعْضُكُمْ لِبَعْضٍ عَدُوٌّ فَاِمَّا يَاْتِيَنَّكُمْ مِّنِّيْ هُدًى فَمَنِ اتَّبَعَ هُدَايَ فَلَا يَضِلُّ وَلَا يَشْقٰى ﴿١٢٣﴾

१२४) र जसले मेरो स्मृतिबाट विमुख हुनेछ त्यसको जीवन कष्टमय हुनेछ र कियामतको दिन त्यसलाई हामीले अन्धा बनाएर उठाउने छौं ।

وَمَنْ اَعْرَضَ عَنْ ذِكْرِيْ فَاِنَّ لَهٗ مَعِيْشَةً ضَنْكًا وَّنَحْشُرُهٗ يَوْمَ الْقِيٰمَةِ اَعْمٰى ﴿١٢٤﴾

१२५) उसले भन्नेछ कि: मेरो पालनकर्ता तिमीले मलाई अन्धो पारेर किन उठायौ, जबकि म त आँखा देख्ने वाला थिएँ ? ।

قَالَ رَبِّ لِمَ حَشَرْتَنِيْٓ اَعْمٰى وَقَدْ كُنْتُ بَصِيْرًا ﴿١٢٥﴾

१२६) (अल्लाहबाट जवाफ आउने छ) यस्तै हुनुपर्थ्यो तिम्रो नजिकमा जब हाम्रा आयतहरू आए तब तिमीले बिर्सिदियौ, यस्तै किसिमले आज हामीले तिमीलाई बिर्सिदिने गर्छौं ।

قَالَ كَذٰلِكَ اَتَتْكَ اٰيٰتُنَا فَنَسِيْتَهَا وَكَذٰلِكَ الْيَوْمَ تُنْسٰى ﴿١٢٦﴾

وَكَذَٰلِكَ نَجْزِي مَنْ أَسْرَفَ وَلَمْ يُؤْمِنْ بِآيَاتِ رَبِّهِ ۚ وَلَعَذَابُ الْآخِرَةِ أَشَدُّ وَأَبْقَىٰ ﴿١٢٧﴾

१२७) यस्तै किसिमले हामीले त्यसलाई प्रतिफल दिन्छौं जसले मर्यादाको उल्लंघन गर्दछ र आफ्नो पालनकर्ताको आयतहरूमाथि ईमान ल्याउँदैन । र निःसंदेह आखिरतको यातना त अत्यन्त कठोर र निकै स्थायी हुनेछ ।

أَفَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا قَبْلَهُمْ مِنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۗ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِأُولِي النُّهَىٰ ﴿١٢٨﴾

१२८) अनि के उनीहरूलाई यस कुराबाट पनि मार्ग प्राप्त भएन कि हामी उनीहरू भन्दा पहिला कैयन् पुस्ताहरूलाई नष्ट गरिसकेका छौं, जसका बस्तीहरूमा यिनीहरूले हिंड्डुल गरिराखेका छन् ? निश्चय नै बुद्धिमानहरूको निम्ति यसमा धेरै निशानीहरू छन् ।

وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَبِّكَ لَكَانَ لِزَامًا وَأَجَلٌ مُسَمًّى ﴿١٢٩﴾

१२९) यदि तिम्रो पालनकर्ताबाट पहिले नै एउटा कुरा निश्चित नभईसकेको भए र एउटा अवधि निश्चित नगरी सकिइएको भए, अवश्य नै तिमीहरूलाई यातनाले तुरुन्तै समातिहाल्ने थियो ।

فَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوعِ الشَّمْسِ وَقَبْلَ غُرُوبِهَا ۖ وَمِنْ آنَاءِ اللَّيْلِ فَسَبِّحْ وَأَطْرَافَ النَّهَارِ لَعَلَّكَ تَرْضَىٰ ﴿١٣٠﴾

१३०) अतः जे जति तिनीहरूले भन्छन त्यस माथि धैर्य गर, र आफ्नो पालनकर्ताको गुणगान गर्दै गर, सूर्योदय भन्दा अगाडि, र त्यो अस्ताउनु भन्दा अगाडि र रातीको समयमा पनि तसबीह (गुणगान) गर, र दिनका अनेक भागहरूमा ताकि सम्भव छ तिमी सहमत हुन सक ।

वَلَا تَمُدَّنَّ عَيْنَيْكَ إِلَىٰ مَا مَتَّعْنَا بِهِۦٓ أَزْوَٰجًا مِّنْهُمْ زَهْرَةَ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا لِنَفْتِنَهُمْ فِيهِ ۚ وَرِزْقُ رَبِّكَ خَيْرٌ وَأَبْقَىٰ ﴿١٣١﴾

१३१) र ती कुराहरूतिर आफ्नो आँखा उठाएर पटक्कै नहेर, जुन हामीले तिनीहरूमध्ये विभिन्न मानिसहरूलाई संसारमा उपभोगको निम्ति दिएका छौं, ताकि हामीले त्यसबाट उनीहरूको परीक्षा लिन सकौं । त्यो त मात्र सांसारिक जीवनको शोभा हो । तर तिम्रो पालनकर्ताबाट तिमीलाई प्रदान गरिएको जीविका मात्र उत्तम र स्थायी छ ।

وَأْمُرْ أَهْلَكَ بِٱلصَّلَوٰةِ وَٱصْطَبِرْ عَلَيْهَا ۖ لَا نَسْـَٔلُكَ رِزْقًا ۖ نَّحْنُ نَرْزُقُكَ ۗ وَٱلْعَٰقِبَةُ لِلتَّقْوَىٰ ﴿١٣٢﴾

१३२) आफ्ना घरका मानिसहरूलाई नमाजको आदेश गर र स्वयम् पनि त्यसमा लागिराख । हामीले तिमीसँग जीविका माँग्दैनौं बरु हामीले स्वयम् तिमीलाई जीविका दिन्छौं, र राम्रो परिणाम त धर्म परायणताकै लागि निश्चित छ ।

وَقَالُوا۟ لَوْلَا يَأْتِينَا بِـَٔايَةٍ مِّن رَّبِّهِۦٓ ۚ أَوَلَمْ تَأْتِهِم بَيِّنَةُ مَا فِى ٱلصُّحُفِ ٱلْأُولَىٰ ﴿١٣٣﴾

१३३) तिनीहरूले भने कि: यस नबीले आफ्नो पालनकर्ताको तर्फबाट हाम्रो तर्फ कुनै निशानी किन ल्याएको छैन ? के तिनीहरूसम्म त्यसको स्पष्ट प्रमाण आइपुगेन, जुन पहिलेको पुस्तकहरूमा उल्लेखित छन् ?''

وَلَوْ أَنَّآ أَهْلَكْنَٰهُم بِعَذَابٍ مِّن قَبْلِهِۦ لَقَالُوا۟ رَبَّنَا لَوْلَآ أَرْسَلْتَ إِلَيْنَا رَسُولًا فَنَتَّبِعَ ءَايَٰتِكَ مِن قَبْلِ أَن نَّذِلَّ وَنَخْزَىٰ ﴿١٣٤﴾

१३४) र यदि हामीले त्यसभन्दा पहिला नै यिनीहरूलाई कुनै यातनाबाट नष्ट गरिदिएको भए, नि:सन्देह यिनीहरूले भन्थे कि "हे हाम्रो पालनकर्ता, तिमीले हाम्रो पासमा कुनै रसूल किन पठाएनौ ? ताकि हामी

अपमानित र निराश हुनुभन्दा अगाडि तिम्रा आयतहरूको अनुपालन गर्ने थियौं ?''

قُلْ كُلٌّ مُّتَرَبِّصٌ فَتَرَبَّصُوا ۖ فَسَتَعْلَمُونَ مَنْ أَصْحَابُ الصِّرَاطِ السَّوِيِّ وَمَنِ اهْتَدَىٰ ﴿١٣٥﴾

१३५) भनिदिनुस्: हर एक परिणामको प्रतिक्षामा छ । अतः अब तिमी पनि प्रतिक्षा गर शीघ्रनै तिमीले थाहा पाइहाल्ने छौ कि को सीधा मार्गवाला छन् र कसलाई मार्गदर्शन प्राप्त छ ।''





# सूरतुल् अंबिया-२१

सूरतुल् अंबिया मक्की हो, यसमा ११२ आयतहरू र ७ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اِقْتَرَبَ لِلنَّاسِ حِسَابُهُمْ وَهُمْ فِيْ غَفْلَةٍ مُّعْرِضُوْنَ ۝١

१) मानिसहरूका (कर्मको) लेखाजोखाको समय नजिक आइपुगको छ तैपनि उनीहरू असावधान भई पन्छिइराखेका छन् ।

مَا يَأْتِيْهِمْ مِّنْ ذِكْرٍ مِّنْ رَّبِّهِمْ مُّحْدَثٍ اِلَّا اسْتَمَعُوْهُ وَهُمْ يَلْعَبُوْنَ ۝٢

२) उनीहरूको पासमा उनीहरूको पालनकर्ताको तर्फबाट जुन नयाँ-नयाँ उपदेश आउँछ त्यसलाई तिनीहरूले ख्याल ठट्टाका साथ नै सुन्दछन् ।

لَاهِيَةً قُلُوْبُهُمْ ۭ وَاَسَرُّوا النَّجْوَى ۖ الَّذِيْنَ ظَلَمُوْا ۖ هَلْ هٰذَآ اِلَّا بَشَرٌ مِّثْلُكُمْ ۚ اَفَتَاْتُوْنَ السِّحْرَ وَاَنْتُمْ تُبْصِرُوْنَ ۝٣

३) तिनीहरूका हृदय अत्यन्त लापरवाहीमा छन् र यी अत्याचारीहरूले गोप्य रूपले कानेखुसी गरे कि ऊ मात्र तिमी जस्तै मानिस हो, अनि के कारण छ कि तिमी आँखा देख्ने भएर पनि जादूको चक्करमा आउँछौ ।

قٰلَ رَبِّيْ يَعْلَمُ الْقَوْلَ فِي السَّمَاۗءِ وَالْاَرْضِ ۡ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ۝٤

४) पैगम्बरले भने कि जुन कुरा आकाश र जमीनमा छन् मेरो पालनकर्ताले त्यसलाई जान्दछ र त्यो सुन्नेवाला र जान्नेवाला छ ।

بَلْ قَالُوْٓا اَضْغَاثُ اَحْلَامٍۢ بَلِ افْتَرٰىهُ بَلْ هُوَ شَاعِرٌ ښ فَلْيَاْتِنَا بِاٰيَةٍ كَمَآ اُرْسِلَ الْاَوَّلُوْنَ ۝٥

५) यति मात्र होइन, बरु तिनीहरूले त भन्छन्, कि यो "कुरआन" त

संभ्रामित सपनाहरूको पोको हो, बरु उसले यसलाई आफै रचिहालेको छ, बरु यो एउटा कवि हो, अन्यथा उनले त हाम्रो सामु कुनै यस्तो निशानी लिएर आउने थिए, जस्तो कि पहिलाका रसूलहरूका लागि पठाइएका थिए ।''

مَآ اٰمَنَتۡ قَبۡلَهُمۡ مِّنۡ قَرۡيَةٍ اَهۡلَكۡنٰهَا‌ ۚ اَفَهُمۡ يُؤۡمِنُوۡنَ ۝٦

६) तिनीहरू भन्दा अघि जति बस्तीलाई हामीले नष्ट पार्‍यौं ती सबै ईमान ल्याएका थिएनन् त के यिनीहरूले अब ईमान ल्याउने छन् ?

وَمَآ اَرۡسَلۡنَا قَبۡلَكَ اِلَّا رِجَالًا نُّوۡحِىۡۤ اِلَيۡهِمۡ‌ فَسۡـئَلُوۡۤا اَهۡلَ الذِّكۡرِ اِنۡ كُنۡتُمۡ لَا تَعۡلَمُوۡنَ ۝٧

७) तिमीभन्दा पहिला पनि जति पैगम्बर हामीले पठायौं सबै पुरुष थिए जसलाई हामीले "वह्य" पठाउने गर्दथ्यौं । तसर्थ तिमीलाई स्वयं ज्ञान छैन भने किताबवालासित सोधिहाल ?।

وَمَا جَعَلۡنٰهُمۡ جَسَدًا لَّا يَاۡكُلُوۡنَ الطَّعَامَ وَمَا كَانُوۡا خٰلِدِيۡنَ ۝٨

८) र हामीले तिनीहरूका यस्ता शरीर बनाएनौं कि खाना नखाउन्, र न त तिनीहरू सधै रहनेवाला थिए ।

ثُمَّ صَدَقۡنٰهُمُ الۡوَعۡدَ فَاَنۡجَيۡنٰهُمۡ وَمَنۡ نَّشَآءُ وَاَهۡلَكۡنَا الۡمُسۡرِفِيۡنَ ۝٩

९) अनि हामीले उनीहरूसित गरेका सबै वाचाहरू वास्तविकतामा परिणत गर्‍यौं र हामीले उनलाई र जसलाई हामीले चाहें त्यसलाई छुटकारा दियौं । र उल्लंघनकारीहरूलाई हामीले नष्ट गरिदियौं ।

لَقَدۡ اَنۡزَلۡنَاۤ اِلَيۡكُمۡ كِتٰبًا فِيۡهِ ذِكۡرُكُمۡ‌ ؕ اَفَلَا تَعۡقِلُوۡنَ ۝١٠

१०) निःसन्देह हामीले तिमीतिर यस्तो किताब अवतरित गरेका छौं जसमा

तिम्रो लागि सदुपदेश छ, के तिमीले तैपनि बुझ्दैनौ ?

وَكَمْ قَصَمْنَا مِن قَرْيَةٍ كَانَتْ ظَالِمَةً وَأَنشَأْنَا بَعْدَهَا قَوْمًا آخَرِينَ ﴿١١﴾

११) र धेरै बस्तीहरू हामीले नष्ट गरिदियौं जो अत्याचारी थिए र उनीहरू पछि हामीले अर्को समुदायको सृष्टि गरिदियौं ।

فَلَمَّا أَحَسُّوا بَأْسَنَا إِذَا هُم مِّنْهَا يَرْكُضُونَ ﴿١٢﴾

१२) जब उनीहरूलाई हाम्रो यातनाको आभास भयो त त्यसबाट भाग्न थाले ।

لَا تَرْكُضُوا وَارْجِعُوا إِلَىٰ مَا أُتْرِفْتُمْ فِيهِ وَمَسَاكِنِكُمْ لَعَلَّكُمْ تُسْأَلُونَ ﴿١٣﴾

१३) भाग-दौड नगर फर्किहाल, त्यही भोग विलासतिर जुन तिमीलाई उपलब्ध थियो र आफ्नो घरतिर गइहाल जसबाट तिमीहरूसंग सोधपूछ त गरियोस् ।

قَالُوا يَا وَيْلَنَا إِنَّا كُنَّا ظَالِمِينَ ﴿١٤﴾

१४) भन्नथाले: "हाय अफशोच हाम्रो दुर्भाग्य ! निःसन्देह हामी अत्याचारी थियौं ।

فَمَا زَالَت تِّلْكَ دَعْوَاهُمْ حَتَّىٰ جَعَلْنَاهُمْ حَصِيدًا خَامِدِينَ ﴿١٥﴾

१५) अनि तिनीहरू सधैं यस्तै पुकार्दै गरे, यहाँसम्म कि हामीले तिनीहरूलाई जरैदेखि काटिएको खेती र निभेको आगो (जस्तै) गरिदियौं ।

وَمَا خَلَقْنَا السَّمَاءَ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا لَاعِبِينَ ﴿١٦﴾

१६) हामीले आकाश र जमिन र जे जति यिनीहरूको मध्यमा छन्, त्यसलाई खेल तमाशाको निम्ति सृष्टि गरेका होइन ।

لَوْ أَرَدْنَا أَن نَّتَّخِذَ لَهْوًا لَّاتَّخَذْنَاهُ مِن لَّدُنَّا إِن كُنَّا فَاعِلِينَ ﴿١٧﴾

१७) यदि हामीले कुनै खेल तमाशा गर्न चाहेको भए आफ्नै तर्फबाट

गरिहाल्थ्यौं, यदि हामी यस्तो गर्नेवाला नै भएको भए ।

بَلْ نَقْذِفُ بِالْحَقِّ عَلَى الْبَاطِلِ فَيَدْمَغُهُ فَإِذَا هُوَ زَاهِقٌ ۚ وَلَكُمُ الْوَيْلُ مِمَّا تَصِفُونَ ﴿١٨﴾

१८) बरु हामीले सत्यबाट असत्य माथि प्रहार गर्दछौं अनि सत्यले असत्यको टाउको कुल्चिदिन्छ र असत्य त्यसैबेला नष्ट भइहाल्छ र जुन कुरा तिमीले मनगढन्त रूपमा बनाउँछौ, त्यसबाट तिम्रै बर्बादी हुन्छ ।

وَلَهُ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَمَنْ عِندَهُ لَا يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِهِ وَلَا يَسْتَحْسِرُونَ ﴿١٩﴾

१९) आकाशहरू र जमिनमा जे छन् । सबै उसै (अल्लाहको) हो । र जो उसको समीपमा छन् तिनीहरू उसको सेवा-भक्तिबाट न अट्टेरिपना गर्छन् र न त थाकछन् ।

يُسَبِّحُونَ اللَّيْلَ وَالنَّهَارَ لَا يَفْتُرُونَ ﴿٢٠﴾

२०) तिनीहरू दिनरात उसैको गुणगान गर्छन् र अलिकति पनि ढिलासुस्ती गर्दैनन् ।

أَمِ اتَّخَذُوا آلِهَةً مِّنَ الْأَرْضِ هُمْ يُنشِرُونَ ﴿٢١﴾

२१) के तिनीहरूले धरती (का प्राणीहरू मध्ये) बाट जसलाई पूज्य बनाइराखेका छन्, तिनीहरूले (कसैलाई) जीवित गर्छन् ?

لَوْ كَانَ فِيهِمَا آلِهَةٌ إِلَّا اللَّهُ لَفَسَدَتَا ۚ فَسُبْحَانَ اللَّهِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٢٢﴾

२२) यदि आकाश र धरतीमा अल्लाह बाहेक अरु कोही पूज्य भएको भए यी दुवैको व्यवस्था अस्तव्यस्त हुने थियो, अतः महान् र उच्च छ अल्लाह, सत्तासनको स्वामी, ती कुराहरूबाट पवित्र छ जुन यी मुश्रिकहरूले वर्णन गर्दछन् ।

لَا يُسْأَلُ عَمَّا يَفْعَلُ وَهُمْ يُسْأَلُونَ ﴿٢٣﴾

२३) ऊ आफ्ना कामहरूको निम्ति

(कसैको अगाडि) जवाफदेही छैन र सबै (उसको अगाडि) जवाफदेही छन् ।

اَمِ اتَّخَذُوْا مِنْ دُوْنِهٖۤ اٰلِهَةً ؕ قُلْ هَاتُوْا بُرْهَانَكُمْ ۚ هٰذَا ذِكْرُ مَنْ مَّعِیَ وَ ذِكْرُ مَنْ قَبْلِیْ ؕ بَلْ اَكْثَرُهُمْ لَا یَعْلَمُوْنَ ۙ الْحَقَّ فَهُمْ مُّعْرِضُوْنَ ﴿۲۴﴾

२४) के उनीहरूले अल्लाह बाहेक अरुलाई आफ्नो पूज्य बनाइराखेका छन् । उनीहरूसित भन कि आफ्नो प्रमाण प्रस्तुत गर, यो मेरो साथवालाको किताब हो र मभन्दा अगाडिकाहरूको प्रमाण । कुरो यो छ कि तिनीहरू मध्ये अधिकांश मानिसहरू सत्य कुरा जान्दैनन् र यसैले (उसबाट) विमुख भइहाल्छन् ।

وَ مَاۤ اَرْسَلْنَا مِنْ قَبْلِكَ مِنْ رَّسُوْلٍ اِلَّا نُوْحِیْۤ اِلَیْهِ اَنَّهٗ لَاۤ اِلٰهَ اِلَّاۤ اَنَا فَاعْبُدُوْنِ ﴿۲۵﴾

२५) र जुन पैगम्बरलाई पनि हामीले तिमीभन्दा अगाडि पठायौं, तिनीहरू तिर यही (वह्य) सन्देश पठायौं कि म बाहेक कोही सत्य पूज्य छैन, तसर्थ तिमी सबै मेरो उपासना गर ।

وَ قَالُوا اتَّخَذَ الرَّحْمٰنُ وَلَدًا سُبْحٰنَهٗ ؕ بَلْ عِبَادٌ مُّكْرَمُوْنَ ۙ﴿۲۶﴾

२६) (मुश्रिकहरू) भन्छन् कि अल्लाहको सन्तान छ ऊ पवित्रछ । बरु तिनीहरू उसको प्रतिष्ठित भक्तहरू हुन् ।

لَا یَسْبِقُوْنَهٗ بِالْقَوْلِ وَ هُمْ بِاَمْرِهٖ یَعْمَلُوْنَ ﴿۲۷﴾

२७) उसभन्दा अगाडि बढेर कुनै कुरा गर्दैनन् र उसको आदेशको पालन गर्दछन् ।

یَعْلَمُ مَا بَیْنَ اَیْدِیْهِمْ وَ مَا خَلْفَهُمْ وَ لَا یَشْفَعُوْنَ ۙ اِلَّا لِمَنِ ارْتَضٰی وَ هُمْ مِّنْ خَشْیَتِهٖ مُشْفِقُوْنَ ﴿۲۸﴾

२८) उनीहरूको अगाडि-पछाडि जे कुराहरू भइसकेका छन् र जे पछि हुनेछन्, उसलाई सबै थाहा छ । र उनीहरूले उसको समीपमा कसैको सिफारिश गर्न सक्दैनन्, तर उस व्यक्ति बाहेक, जोसित अल्लाह प्रसन्न

छ र उनीहरू स्वयम् उसको भयले भयभीत छन् ।

وَمَنْ يَّقُلْ مِنْهُمْ اِنِّيْٓ اِلٰهٌ مِّنْ دُوْنِهٖ فَذٰلِكَ نَجْزِيْهِ جَهَنَّمَ ۭ كَذٰلِكَ نَجْزِي الظّٰلِمِيْنَ ۝٢٩

२९) उनीहरू मध्ये यदि कुनै व्यक्तिले यो भन्दछ कि अल्लाह बाहेक म पूजाको योग्य छु भने त्यसलाई हामीले नर्कको दण्ड दिनेछौं र अत्याचारीहरूलाई हामीले यस्तै किसिमका सजाय दिने गर्दछौं ।

اَوَلَمْ يَرَ الَّذِيْنَ كَفَرُوْٓا اَنَّ السَّمٰوٰتِ وَالْاَرْضَ كَانَتَا رَتْقًا فَفَتَقْنٰهُمَا ۭ وَجَعَلْنَا مِنَ الْمَاۗءِ كُلَّ شَيْءٍ حَيٍّ ۭ اَفَلَا يُؤْمِنُوْنَ ۝٣٠

३०) के ती मानिसहरूले जसले इन्कार गरे, यो देखेनन् कि यी आकाश र धरती एक आपसमा जोडिएका (थिए) । अनि हामीले तिनलाई अलग-अलग गर्‍यौं । र सम्पूर्ण जानदारहरूलाई हामीले पानीबाट सृष्टि गर्‍यौं । तैपनि यी मानिसहरूले ईमान किन ल्याउँदैनन् ?

وَجَعَلْنَا فِي الْاَرْضِ رَوَاسِيَ اَنْ تَمِيْدَ بِهِمْ ۠ وَجَعَلْنَا فِيْهَا فِجَاجًا سُبُلًا لَّعَلَّهُمْ يَهْتَدُوْنَ ۝٣١

३१) र हामीले धरतीमा पहाडहरू उभ्याई दिऔं ताकि त्यसले प्राणीहरूलाई हल्लाउन नसकोस् र हामीले त्यसमा फराकिला बाटोहरू बनायौं ताकि तिनीहरूले मार्ग प्राप्त गर्न सकुन् ।

وَجَعَلْنَا السَّمَاۗءَ سَقْفًا مَّحْفُوْظًا ښ وَّهُمْ عَنْ اٰيٰتِهَا مُعْرِضُوْنَ ۝٣٢

३२) र हामीले आकाशलाई एउटा सुरक्षित छत बनायौं, तैपनि तिनीहरूले हाम्रा निशानीहरूबाट विमुख भइराखेका छन् ।

وَهُوَ الَّذِيْ خَلَقَ الَّيْلَ وَالنَّهَارَ وَالشَّمْسَ وَالْقَمَرَ ۭ كُلٌّ فِيْ فَلَكٍ يَّسْبَحُوْنَ ۝٣٣

३३) उही अल्लाह नै हो जसले दिन र राती बनायो र सूर्य र चन्द्र पनि, प्रत्येक आ-आफ्ना कक्षमा परिक्रमा गरिराखेका छन् ।

وَمَا جَعَلْنَا لِبَشَرٍ مِّن قَبْلِكَ الْخُلْدَ ۖ أَفَإِن مِّتَّ فَهُمُ الْخَالِدُونَ ﴿٣٤﴾

३४) हामीले तपाईभन्दा पहिला पनि कसैलाई अमरता प्रदान गरेका छैनौं । अनि के तपाईको मृत्यु भयो भने तिनीहरू सधैं बाँची रहने छन् ?

كُلُّ نَفْسٍ ذَائِقَةُ الْمَوْتِ ۗ وَنَبْلُوكُم بِالشَّرِّ وَالْخَيْرِ فِتْنَةً ۖ وَإِلَيْنَا تُرْجَعُونَ ﴿٣٥﴾

३५) प्रत्येक जीवले मृत्युको स्वाद चाख्नुपर्नेछ र हामीले राम्रो नराम्रो परिस्थितिहरूमा पारेर तिमी सबैको परीक्षा लिन्छौ । अन्ततः तिमी सबैले हामीतिरै फर्केर आउनु छ ।

وَإِذَا رَآكَ الَّذِينَ كَفَرُوا إِن يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي يَذْكُرُ آلِهَتَكُمْ وَهُم بِذِكْرِ الرَّحْمَٰنِ هُمْ كَافِرُونَ ﴿٣٦﴾

३६) यी अवज्ञाकारीहरूले जब तपाईलाई देख्दछन् तब तिम्रो उपहास नै गर्दछन् कि "के यही नै त्यो व्यक्ति हो जसले तिम्रा पूज्यहरूको नराम्रो शब्दमा चर्चा गर्दछ ।" र तिनीहरू स्वयम् रहमान (संसारको स्वामी) को स्मरण गर्नबाट इन्कार गर्दछन् ।

خُلِقَ الْإِنسَانُ مِنْ عَجَلٍ ۚ سَأُرِيكُمْ آيَاتِي فَلَا تَسْتَعْجِلُونِ ﴿٣٧﴾

३७) मनुष्य हतारिने प्राणी हो । मैले तिमीलाई शीघ्र नै आफ्ना निशानीहरू देखाउने छु । अतः तिमी मसित हतार नगर ।

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٣٨﴾

३८) (तिनीहरूले भन्छन्) कि यदि तिमी साँचो हौ भने बताऊ यो वाचा कहिले पूरा हुनेछ ?

لَوْ يَعْلَمُ الَّذِينَ كَفَرُوا حِينَ لَا يَكُفُّونَ عَن وُجُوهِهِمُ النَّارَ وَلَا عَن ظُهُورِهِمْ وَلَا هُمْ يُنصَرُونَ ﴿٣٩﴾

३९) काश ! यी काफिरहरूले बुझ्ने भए कि त्यस वखत न त यिनीहरूले आगोलाई आफ्ना अगाडिबाट हटाउन सक्नेछन् र नत आफ्नो पछाडिबाट र न त यिनको सहायता नै गरिनेछ ।

بَلْ تَأْتِيهِم بَغْتَةً فَتَبْهَتُهُمْ فَلَا يَسْتَطِيعُونَ رَدَّهَا وَلَا هُمْ يُنظَرُونَ ﴿٤٠﴾

४०) (हो) ! वाचाको समय उनको पासमा एक्कासी आउनेछ र तिनीहरूलाई अचम्म पारिदिनेछ, अनि न त यी मानिसहरूले त्यसलाई टार्नसक्छन् र न अलिकति पनि उनीहरूलाई मोहलत (समय) दिइनेछ ।

وَلَقَدِ اسْتُهْزِئَ بِرُسُلٍ مِّن قَبْلِكَ فَحَاقَ بِالَّذِينَ سَخِرُوا مِنْهُم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٤١﴾

४१) र तपाईभन्दा अघिका रसूलहरूसँग पनि हाँसो ठट्टा गरियो, अनि हाँसो गर्नेवालाहरूलाई नै त्यो कुराले घेरिहाल्यो जसको कि तिनीहरू हाँसो ठट्टा गर्दथे ।

قُلْ مَن يَكْلَؤُكُم بِاللَّيْلِ وَالنَّهَارِ مِنَ الرَّحْمَٰنِ ۗ بَلْ هُمْ عَن ذِكْرِ رَبِّهِم مُّعْرِضُونَ ﴿٤٢﴾

४२) यिनीहरू सँग सोध्नुस् कि रात र दिनमा अल्लाहबाट कसले तिम्रो रक्षा गर्न सक्दछ ? कुरो यो छ कि यिनीहरू आफ्नो पालनकर्ताको स्मरणबाट विमुख भएका छन् ।

أَمْ لَهُمْ آلِهَةٌ تَمْنَعُهُم مِّن دُونِنَا ۚ لَا يَسْتَطِيعُونَ نَصْرَ أَنفُسِهِمْ وَلَا هُم مِّنَّا يُصْحَبُونَ ﴿٤٣﴾

४३) के हामी बाहेक यिनीहरूका अन्य पूज्य छन् जसले यिनीहरूलाई विपत्तिबाट बचाउन सक्छन् तिनीहरू त स्वयम् आफ्नो सहायता गर्न सक्दैनन् र नत हाम्रो तर्फबाट कसैले तिनीहरूको साथ दिनेछ ।

بَلْ مَتَّعْنَا هَٰؤُلَاءِ وَآبَاءَهُمْ حَتَّىٰ طَالَ عَلَيْهِمُ الْعُمُرُ ۗ أَفَلَا يَرَوْنَ أَنَّا نَأْتِي الْأَرْضَ نَنقُصُهَا مِنْ أَطْرَافِهَا ۚ أَفَهُمُ الْغَالِبُونَ ﴿٤٤﴾

४४) बरु (कुरो यो छ कि) हामीले उनीहरूलाई र उनीहरूका बाबु बाजेलाई जीवनका सुख सुविधाका सामाग्री प्रदान गर्‍यौं, यहाँसम्म कि उनीहरूको लामो उमेर बितिहाल्यो । त के तिनीहरूले देख्दैनन् कि हामीले धरतीलाई त्यसका किनाराहरूबाट

घटाउँदै आइराखेका छौं । अनि के तिनीहरू अभिमानी रहनेछन् ?

قُلْ إِنَّمَآ أُنذِرُكُم بِالْوَحْيِ ۚ وَلَا يَسْمَعُ الصُّمُّ الدُّعَآءَ
إِذَا مَا يُنذَرُونَ ﴿٤٥﴾

४५) भनिदिनुस् ! कि म त अल्लाहको सन्देशबाट तिमीहरूलाई नसीहत (सर्तक) गर्दछु तर बहिराहरूले कुरा सुन्दैनन् जब तिनीहरूलाई नसिहत गरिन्छ ।

وَلَئِن مَّسَّتْهُمْ نَفْحَةٌ مِّنْ عَذَابِ رَبِّكَ
لَيَقُولُنَّ يَٰوَيْلَنَآ إِنَّا كُنَّا ظَٰلِمِينَ ﴿٤٦﴾

४६) यदि उनीहरूलाई तिम्रो पालनकर्ताको सजायको सानो झोको पनि लाग्छ त तिनीहरूले भन्नेछन् कि हाय अफशोच कस्तो दुर्भाग्य ! हामी निःसन्देह पापी थियौं ।

وَنَضَعُ الْمَوَازِينَ الْقِسْطَ لِيَوْمِ الْقِيَٰمَةِ فَلَا تُظْلَمُ
نَفْسٌ شَيْـًٔا ۖ وَإِن كَانَ مِثْقَالَ حَبَّةٍ مِّنْ
خَرْدَلٍ أَتَيْنَا بِهَا ۗ وَكَفَىٰ بِنَا حَٰسِبِينَ ﴿٤٧﴾

४७) र हामीले कियामतका दिन निसाफको तराजू बीचमा राख्नेछौं अनि कुनै पनि व्यक्तिप्रति अन्याय हुनेछैन । र एउटा रायोको दाना बराबर पनि कर्म छ भने हामीले त्यसलाई उपस्थित गराउनेछौं, र हामी हिसाब गर्नको निमित्त पर्याप्त छौं ।

وَلَقَدْ ءَاتَيْنَا مُوسَىٰ وَهَٰرُونَ الْفُرْقَانَ
وَضِيَآءً وَذِكْرًا لِّلْمُتَّقِينَ ﴿٤٨﴾

४८) यो सत्य हो कि हामीले मूसा र "हारूनलाई" इन्साफ गर्ने प्रकाश र संयमीहरूका लागि उपदेश र नसीहतका लागि किताब प्रदान गर्‍यौं ।

الَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِالْغَيْبِ وَهُم مِّنَ
السَّاعَةِ مُشْفِقُونَ ﴿٤٩﴾

४९) तिनीहरू जो नदेखेता पनि आफ्नो पालनकर्तासित तर्सन्छन् र कियामतको कल्पनाबाटै भयले काम्पने गर्दछन् ।

وَهٰذَا ذِكۡرٌ مُّبٰرَكٌ اَنۡزَلۡنٰهُ ؕ اَفَاَنۡتُمۡ لَهٗ مُنۡكِرُوۡنَ ﴿۵۰﴾

५०) र यो उपदेश र वरदानयुक्त कुरआन हामीले अवतरित गरेका छौं । के तिमीले तैपनि यसलाई अस्वीकार गर्दछौ ?

وَلَقَدۡ اٰتَيۡنَاۤ اِبۡرٰهِيۡمَ رُشۡدَهٗ مِنۡ قَبۡلُ وَكُنَّا بِهٖ عٰلِمِيۡنَ ﴿۵۱﴾

५१) निःसन्देह हामीले इब्राहीम (अलै) लाई यस अघि नै सदाचार र सोच समझ प्रदान गरेका थियौं र हामीलाई उनको अवस्था बारे राम्ररी थाहा थियो ।

اِذۡ قَالَ لِاَبِيۡهِ وَقَوۡمِهٖ مَا هٰذِهِ التَّمَاثِيۡلُ الَّتِىۡۤ اَنۡتُمۡ لَهَا عٰكِفُوۡنَ ﴿۵۲﴾

५२) जब उनले आफ्नो पिता र आफ्नो समुदायसित भनेः "यी मूर्तिहरू को हुन्, जसको तिमीहरू एकाग्रभई पूजा गर्दछौ ?"

قَالُوۡا وَجَدۡنَاۤ اٰبَآءَنَا لَهَا عٰبِدِيۡنَ ﴿۵۳﴾

५३) तिनीहरू जवाफदिन थाले कि हामीले आफ्ना बाबु-बाजेहरूलाई यिनैको पूजा गरेको देखेका छौं ।

قَالَ لَقَدۡ كُنۡتُمۡ اَنۡتُمۡ وَاٰبَآؤُكُمۡ فِىۡ ضَلٰلٍ مُّبِيۡنٍ ﴿۵۴﴾

५४) इब्राहीम (अलै) ले भने ! कि निःसन्देह तिमी र तिम्रा बाबु-बाजे पनि अज्ञानताबाट ग्रस्त रहयौ ।

قَالُوۡۤا اَجِئۡتَنَا بِالۡحَـقِّ اَمۡ اَنۡتَ مِنَ اللّٰعِبِيۡنَ ﴿۵۵﴾

५५) तिनीहरूले भने कि के साँच्चै तपाईले हाम्रो पासमा सत्य कुरा ल्याउनुभएको छ वा कि त्यसै हाँसो ख्याल गरी रहनु भएको छ ।

قَالَ بَلۡ رَّبُّكُمۡ رَبُّ السَّمٰوٰتِ وَالۡاَرۡضِ الَّذِىۡ فَطَرَهُنَّ ۖ وَاَنَا عَلٰى ذٰ لِكُمۡ مِّنَ الشّٰهِدِيۡنَ ﴿۵۶﴾

५६) (इब्राहीम -अलै.)ले) भने, (होइन) बरु वास्तवमै तिमी सबैको पालनकर्ता त्यो हो जो आकाशहरू र धरतीको मालिक हो, जसले तिनीहरूलाई सृष्टि गरेका हो र म

यस कुराको साक्षी छु र यसलाई स्वीकार गर्दछु ।

وَتَاللّٰهِ لَاَكِيْدَنَّ اَصْنَامَكُمْ بَعْدَ اَنْ تُوَلُّوْا مُدْبِرِيْنَ ﴿٥٧﴾

५७) र अल्लाहको शपथ ! तिमीहरू विमुख भई फर्केर गएपछि म तिम्रा देवताहरूसित एउटा चाल चाल्ने छु ।

فَجَعَلَهُمْ جُذٰذًا اِلَّا كَبِيْرًا لَّهُمْ لَعَلَّهُمْ اِلَيْهِ يَرْجِعُوْنَ ﴿٥٨﴾

५८) फेरि उहाँ (इब्राहीम-अलै.)) ले तिनीहरूलाई (फुटालेर टुक्रा-टुक्रा पारी दिए, तर एउटा ठूलो मूर्तिलाई छाडिदिए यो पनि यसकारण कि उनीहरू त्यसतिर प्रवृत्त होउन् ।

قَالُوْا مَنْ فَعَلَ هٰذَا بِاٰلِهَتِنَاۤ اِنَّهٗ لَمِنَ الظّٰلِمِيْنَ ﴿٥٩﴾

५९) उनीहरूले भन्न थाले कि हाम्रा देवताहरूसित यस्तो व्यवहार कसले गऱ्यो निश्चय नै त्यो कुनै अत्याचारी हुनु पर्छ ।

قَالُوْا سَمِعْنَا فَتًى يَّذْكُرُهُمْ يُقَالُ لَهٗۤ اِبْرٰهِيْمُ ﴿٦٠﴾

६०) तिनीहरूले भने: हामीले एउटा युवकले उनको बारेमा चर्चा गरेको सुनेका थियौं, जसलाई इब्राहीम भनिन्छ ।

قَالُوْا فَاْتُوْا بِهٖ عَلٰۤى اَعْيُنِ النَّاسِ لَعَلَّهُمْ يَشْهَدُوْنَ ﴿٦١﴾

६१) तिनीहरूले भने कि ठीक छ उसलाई सभामा मानिसहरूको अगाडि ल्याऊ कि तिनलाई सबैले हेर्न सकुन् ।

قَالُوْۤا ءَاَنْتَ فَعَلْتَ هٰذَا بِاٰلِهَتِنَا يٰۤاِبْرٰهِيْمُ ﴿٦٢﴾

६२) (इब्राहीम आएपछि) उनीहरूले भने : हे इब्राहीम ! के तिमीले नै हाम्रा देवताहरूसित यस्तो कर्म गरेको हो ?

قَالَ بَلْ فَعَلَهٗ ۖ كَبِيْرُهُمْ هٰذَا فَسْـَٔلُوْهُمْ اِنْ كَانُوْا يَنْطِقُوْنَ ﴿٦٣﴾

६३) (इब्राहीम (अलै.)ले) जवाफ दिए बरु यो उनीहरूभन्दा ठूलोले गरेको छ,

यदि यिनीहरू बोल्छन् भने आफ्ना यी पूज्यहरूसित नै सोध ।

فَرَجَعُوٓا إِلَىٰٓ أَنفُسِهِمْ فَقَالُوٓا إِنَّكُمْ أَنتُمُ ٱلظَّٰلِمُونَ ﴿٦٤﴾

६४) अनि तिनीहरू आफ्ना टाउका टेकेर पल्टेर भन्न थाले: अत्याचारी त तिमी नै हौ ।

ثُمَّ نُكِسُوا عَلَىٰ رُءُوسِهِمْ لَقَدْ عَلِمْتَ مَا هَٰٓؤُلَآءِ يَنطِقُونَ ﴿٦٥﴾

६५) अनि तिनीहरू लज्जाले व्याकुल भए र (भन्न थाले) कि यो तिमीलाई पनि थाहा छ कि यिनीहरू (यी मूर्तिहरू) बोल्दैनन् ।

قَالَ أَفَتَعْبُدُونَ مِن دُونِ ٱللَّهِ مَا لَا يَنفَعُكُمْ شَيْـًٔا وَلَا يَضُرُّكُمْ ﴿٦٦﴾

६६) त्यसपछि (इब्राहीम (अलै.)ले) भने: कि "त्यसो भए तिमीहरूले अल्लाहलाई छाडी यस्ताकुराको पूजा किन गर्दछौ जसले (पूजा गरेमा) तिमीलाई न कुनै लाभ पुऱ्याउन सक्तछन् र पूजा नगरेमा न कुनै हानि ?"

أُفٍّ لَّكُمْ وَلِمَا تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ أَفَلَا تَعْقِلُونَ ﴿٦٧﴾

६७) धिक्कार छ तिमीहरूलाई र उनीहरूलाई पनि, जसलाई तिमीहरूले, अल्लाह बाहेक पूजा गर्दछौ, के तिमीहरूसँग यति पनि बुद्धि छैन ?

قَالُوا حَرِّقُوهُ وَٱنصُرُوٓا ءَالِهَتَكُمْ إِن كُنتُمْ فَٰعِلِينَ ﴿٦٨﴾

६८) (तिनीहरूले) भन्न थाले कि यदि तिमीहरूले देवताहरूको प्रतिशोधको लागि केही गर्नु छ भने यस (इब्राहीम) लाई जलाई हाल र आफ्ना देवताहरूको सहायता गर ।

قُلْنَا يَٰنَارُ كُونِى بَرْدًا وَسَلَٰمًا عَلَىٰٓ إِبْرَٰهِيمَ ﴿٦٩﴾

६९) हामीले आदेश गऱ्यौं कि हे आगो ! तिमी (इब्राहीमको निम्ति) चिसो

भई जा र आराम र सुरक्षाको साधन बनी हाल ।

وَأَرَادُوا بِهِ كَيْدًا فَجَعَلْنَاهُمُ الْأَخْسَرِينَ ﴿٧٠﴾

७०) तिनीहरूले उनको कुभलो गर्न चाहे, तर हामीले तिनीहरूलाई असफल गरिदियौं ।

وَنَجَّيْنَاهُ وَلُوطًا إِلَى الْأَرْضِ الَّتِي بَارَكْنَا فِيهَا لِلْعَالَمِينَ ﴿٧١﴾

७१) र हामीले “इब्राहीम (अलै)” र “लूत (अलै) लाई” बचाएर धरतीको त्यो भागतिर लग्यौं जसमा हामीले संसारका मानिसहरूको निम्ति वरदान राखेका थियौं ।

وَوَهَبْنَا لَهُ إِسْحَاقَ وَيَعْقُوبَ نَافِلَةً ۖ وَكُلًّا جَعَلْنَا صَالِحِينَ ﴿٧٢﴾

७२) र हामीले “इब्राहीम (अलै) लाई इस्हाक” र “यअ्कुब” प्रदान गर्‍यौं र यसको अतिरिक्त उपहार स्वरूप हरेकलाई असल मानिस बनायौं ।

وَجَعَلْنَاهُمْ أَئِمَّةً يَهْدُونَ بِأَمْرِنَا وَأَوْحَيْنَا إِلَيْهِمْ فِعْلَ الْخَيْرَاتِ وَإِقَامَ الصَّلَاةِ وَإِيتَاءَ الزَّكَاةِ ۖ وَكَانُوا لَنَا عَابِدِينَ ﴿٧٣﴾

७३) र हामीले उनीहरूलाई नायक बनायौं कि हाम्रो आदेशले मार्ग निर्देशन गरुन् र तिनीहरूलाई असल कर्म गर्न र नमाज़ पढ्न र दान दिनको निम्ति आदेश पठायौं र तिनीहरू सबै हाम्रो उपासना गर्ने सेवक थिए ।

وَلُوطًا آتَيْنَاهُ حُكْمًا وَعِلْمًا وَنَجَّيْنَاهُ مِنَ الْقَرْيَةِ الَّتِي كَانَتْ تَعْمَلُ الْخَبَائِثَ ۗ إِنَّهُمْ كَانُوا قَوْمَ سَوْءٍ فَاسِقِينَ ﴿٧٤﴾

७४) हामीले “लूत (अलै) लाई” पनि आदेश र ज्ञान प्रदान गर्‍यौं र उनलाई त्यस बस्तीबाट छुटकारा दिलायौं जहाँका मानिसहरू नराम्रो कर्म गर्दथिए । वास्तवमा तिनीहरू साह्रै नै नराम्रो र उल्लघंनकारी थिए ।

وَأَدْخَلْنٰهُ فِي رَحْمَتِنَا ۖ إِنَّهُ مِنَ الصّٰلِحِينَ ﴿٧٥﴾

७५) र हामीले लूत (अलै)लाई आफ्नो कृपापात्र बनायौं । निःसन्देह उनी असल मानिसहरू मध्येका थिए ।

وَنُوحًا إِذْ نَادٰى مِنْ قَبْلُ فَاسْتَجَبْنَا لَهُ فَنَجَّيْنٰهُ وَأَهْلَهُ مِنَ الْكَرْبِ الْعَظِيمِ ﴿٧٦﴾

७६) र “नूहको” त्यस समयको पनि स्मरण गर्नुस्, जबकि उनले यसभन्दा अगाडि हामीलाई पुकारेका थिए, तब हामीले उनको प्रार्थना स्वीकार गर्‍यौं र हामीले उनलाई र उनका घरवालाहरूलाई ठूलो क्लेशबाट छुटकारा दिलायौं ।

وَنَصَرْنٰهُ مِنَ الْقَوْمِ الَّذِينَ كَذَّبُوا بِاٰيٰتِنَا ۚ إِنَّهُمْ كَانُوا قَوْمَ سَوْءٍ فَأَغْرَقْنٰهُمْ أَجْمَعِينَ ﴿٧٧﴾

७७) र जुन मानिसहरूले हाम्रा आयतहरूलाई झुठ्ठा भनिराखेका थिए तिनीहरूको दाँजोमा हामीले उनको मद्दत गर्‍यौं । वास्तवमा तिनीहरू नराम्रा मानिसहरू थिए । अतः हामीले ती सबैलाई डुबाइदियौं ।

وَدَاوٗدَ وَسُلَيْمٰنَ إِذْ يَحْكُمٰنِ فِي الْحَرْثِ إِذْ نَفَشَتْ فِيهِ غَنَمُ الْقَوْمِ ۚ وَكُنَّا لِحُكْمِهِمْ شٰهِدِينَ ﴿٧٨﴾

७८) र “दाऊद”(अ.) र “सुलैमान” (अ.)लाई सम्झनुस् जबकि उनीहरू खेत सम्बन्धी कुरामा निर्णय गरिराखेका थिए त्यतिखेर केही मानिसहरूका बाख्राहरू त्यसमा चरेका थिए, र तिनीहरूको निर्णयमा हामी उपस्थित थियौं ।

فَفَهَّمْنٰهَا سُلَيْمٰنَ ۚ وَكُلًّا اٰتَيْنَا حُكْمًا وَعِلْمًا ۫ وَسَخَّرْنَا مَعَ دَاوٗدَ الْجِبَالَ يُسَبِّحْنَ وَالطَّيْرَ ۚ وَكُنَّا فٰعِلِينَ ﴿٧٩﴾

७९) अनि हामीले त्यस विवादको सही निर्णय सुलैमान (अलै)लाई सम्झाइदियौं । र हामीले दुवैलाई निर्णय शक्ति र ज्ञान प्रदान गरेका थियौं र हामीले पहाडहरूलाई र चराहरूलाई पनि दाऊद (अलै)को

अधीनमा गरिदिएका थियौं जसले कि उनीसँगै अल्लाहको स्तुति गर्दथे र यस्तो गर्नेवाला हामी नै थियौं ।

وَعَلَّمْنٰهُ صَنْعَةَ لَبُوْسٍ لَّكُمْ لِتُحْصِنَكُمْ مِّنْۢ بَاْسِكُمْ ۚ فَهَلْ اَنْتُمْ شٰكِرُوْنَ ﴿٨٠﴾

८०) र हामीले उनलाई तिमीहरूका लागी परिधान (अर्थात कवचको शिल्पकला) पनि सिकाएका थियौं ताकि युद्धको क्षतिबाट तिम्रो रक्षा होस्  त के तिमी अनुग्रहित बन्ने छौ ?

وَلِسُلَيْمٰنَ الرِّيْحَ عَاصِفَةً تَجْرِيْ بِاَمْرِهٖٓ اِلَى الْاَرْضِ الَّتِيْ بٰرَكْنَا فِيْهَا ۗ وَكُنَّا بِكُلِّ شَيْءٍ عٰلِمِيْنَ ﴿٨١﴾

८१) सुलैमान (अलै.) को अधीनमा हामीले तीव्र वायुलाई वशीभूत गरिदिएका थियौं, जुन उनको आदेश अनुसार यस भू-भागतिर चल्थ्यो जहाँ हामीले बरकत प्रदान गरेका थियौं । र हामी त हरेक कुराको ज्ञाता हौं ।

وَمِنَ الشَّيٰطِيْنِ مَنْ يَّغُوْصُوْنَ لَهٗ وَيَعْمَلُوْنَ عَمَلًا دُوْنَ ذٰلِكَ ۚ وَكُنَّا لَهُمْ حٰفِظِيْنَ ﴿٨٢﴾

८२) यस्तै अनेक शैतानका समूहहरूलाई पनि उनको अधीनमा गरेका थियौं, जो उनको आदेशबाट डुबुल्की र यसका अतिरिक्त अरु काम पनि गर्दथे, र तिनीहरूलाई सम्हाल्नेवाला हामी नै थियौं ।

وَاَيُّوْبَ اِذْ نَادٰى رَبَّهٗٓ اَنِّيْ مَسَّنِيَ الضُّرُّ وَاَنْتَ اَرْحَمُ الرّٰحِمِيْنَ ﴿٨٣﴾

८३) अय्यूब (अ.) को अवस्थालाई पनि सम्भ्क जब उनले आफ्नो पालनकर्तासित प्रार्थना गरे कि मलाई यो रोग लागेको छ र तिमी सबैभन्दा ठूला दयावान हौ ।

فَاسْتَجَبْنَا لَهٗ فَكَشَفْنَا مَا بِهٖ مِنْ ضُرٍّ وَّاٰتَيْنٰهُ اَهْلَهٗ وَمِثْلَهُمْ مَّعَهُمْ رَحْمَةً مِّنْ عِنْدِنَا وَذِكْرٰى لِلْعٰبِدِيْنَ ﴿٨٤﴾

८४) अत: हामीले उनको प्रार्थना स्वीकार गर्‍यौं र उनलाई जुन कष्ट थियो त्यो हामीले समाप्त गरिहाल्यौं र

उनलाई परिवार र सन्तान प्रदान गर्‍यौं, र तिनीहरू जस्तै अरु पनि आफ्नो विशेष कृपाले प्रदान गर्‍यौं, ताकि सच्चा सेवकहरूको लागि उपदेश होस् ।

وَإِسْمَٰعِيلَ وَإِدْرِيسَ وَذَا ٱلْكِفْلِ ۖ كُلٌّ مِّنَ ٱلصَّٰبِرِينَ ﴿٨٥﴾

८५) र "इसमाईल" र "इदरीस" र "जुलकिफ्ल" (माथि पनि कृपादृष्टि गर्‍यौं) यी सबै धैर्यवान थिए ।

وَأَدْخَلْنَٰهُمْ فِى رَحْمَتِنَآ ۖ إِنَّهُم مِّنَ ٱلصَّٰلِحِينَ ﴿٨٦﴾

८६) उनीहरूलाई हामीले आफ्नो दयालुतामा प्रवेश गरायौं यी सबै असल मानिसहरू थिए ।

وَذَا ٱلنُّونِ إِذ ذَّهَبَ مُغَٰضِبًا فَظَنَّ أَن لَّن نَّقْدِرَ عَلَيْهِ فَنَادَىٰ فِى ٱلظُّلُمَٰتِ أَن لَّآ إِلَٰهَ إِلَّآ أَنتَ سُبْحَٰنَكَ إِنِّى كُنتُ مِنَ ٱلظَّٰلِمِينَ ﴿٨٧﴾

८७) र "ज़न्नून" (यूनूस) लाई सम्झ ! जब उनी क्रोधको अवस्थामा हिँडिहाले र ठानेकि हामीले उनलाई समात्न सक्ने छैनौ अन्ततः उनले अँध्यारोबाट पुकारिहाले कि हे अल्लाह ! तिमी बाहेक अरु कोही सत्य पूज्य छैन । तिमी पवित्र छौ निःसन्देह म नै अपराधी थिएँ ।

فَٱسْتَجَبْنَا لَهُۥ وَنَجَّيْنَٰهُ مِنَ ٱلْغَمِّ ۚ وَكَذَٰلِكَ نُۨجِى ٱلْمُؤْمِنِينَ ﴿٨٨﴾

८८) अनि हामीले उनको प्रार्थना स्वीकार गरिहालें र चिन्ताबाट उनलाई मुक्त गर्‍यौं र ईमानवालाहरूलाई हामीले यस्तै प्रकारले छुटकारा दिलाउँछौं ।

وَزَكَرِيَّآ إِذْ نَادَىٰ رَبَّهُۥ رَبِّ لَا تَذَرْنِى فَرْدًا وَأَنتَ خَيْرُ ٱلْوَٰرِثِينَ ﴿٨٩﴾

८९) र "ज़करीया" (अ.) लाई सम्झ जब उनले आफ्नो पालनकर्तासित प्रार्थना गरे कि हे मेरो पालनकर्ता ! मलाई एक्लो नछाड, तिमी सबैभन्दा असल वारिस छौ ।

فَاسْتَجَبْنَا لَهُ وَوَهَبْنَا لَهُ يَحْيَىٰ وَأَصْلَحْنَا لَهُ زَوْجَهُ ۚ إِنَّهُمْ كَانُوا يُسَارِعُونَ فِي الْخَيْرَاتِ وَيَدْعُونَنَا رَغَبًا وَرَهَبًا ۖ وَكَانُوا لَنَا خَاشِعِينَ ﴿٩٠﴾

९०) हामीले उनको पुकार प्रार्थना स्वीकार गरेर उनलाई “यह्या” (अ.) प्रदान गऱ्यौं र उनकी श्रीमतीलाई सन्तानको योग्य बनाइ हाल्यौं । यी भलो मानिसहरू असल कामतिर हतार गर्दथे र हामीलाई आशा र डरले पुकार्दथे र हाम्रो अगाडि याचना गर्दथे ।

وَالَّتِي أَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيهَا مِنْ رُوحِنَا وَجَعَلْنَاهَا وَابْنَهَا آيَةً لِلْعَالَمِينَ ﴿٩١﴾

९१) र ती पवित्र आचारण वाली स्त्री (मरियम) जसले आफ्नो पवित्रताको रक्षा गरिन् (तब) हामीले उसभित्र आफ्नो रूह फूकिदियौं र उनलाई तथा उनको पुत्रलाई संसारका मानिसहरूका लागि निशानी बनाइदियौं ।

إِنَّ هَٰذِهِ أُمَّتُكُمْ أُمَّةً وَاحِدَةً وَأَنَا رَبُّكُمْ فَاعْبُدُونِ ﴿٩٢﴾

९२) यो तिम्रो समुदाय हो जो वास्तवमा एउटै समुदाय हो, र म तिम्रो सबैको पालनकर्ता हूँ, तसर्थ तिमीहरू मेरो नै पूजा गर्ने गर ।

وَتَقَطَّعُوا أَمْرَهُمْ بَيْنَهُمْ ۖ كُلٌّ إِلَيْنَا رَاجِعُونَ ﴿٩٣﴾

९३) तर यी मानिसहरू आफ्ना कुराहरूमा आपसमा समूहहरूमा विभाजित भइहाले (तर) सबै हामीतिरै फर्कनेवाला हुन् ।

فَمَنْ يَعْمَلْ مِنَ الصَّالِحَاتِ وَهُوَ مُؤْمِنٌ فَلَا كُفْرَانَ لِسَعْيِهِ وَإِنَّا لَهُ كَاتِبُونَ ﴿٩٤﴾

९४) फेरि जसले असल कर्म गर्छ र ऊ ईमानवाला पनि छ भने उसको प्रयास खेर जानेछैन र हामीले उसको निम्ति (कर्मको फल) लेखिराखेका छौं ।

وَحَرَامٌ عَلَىٰ قَرْيَةٍ أَهْلَكْنَاهَا أَنَّهُمْ لَا يَرْجِعُونَ ﴿٩٥﴾

९५) र जुन बस्तीलाई हामीले नष्ट पारिदियौं उसको लागि यो निश्चित

छ कि त्यहाँका मानिसहरू फर्केर आउने छैनन् ।

९६) यहाँसम्म कि "याजूज" र "माजूज" छाडिनेछन् र उनीहरू प्रत्येक उच्च पहाडबाट दगुर्दै आउने छन् ।

حَتَّىٰٓ إِذَا فُتِحَتْ يَأْجُوجُ وَمَأْجُوجُ وَهُم مِّن كُلِّ حَدَبٍ يَنسِلُونَ ﴿٩٦﴾

९७) र सच्चा वादा नजिक आउनेछ, त्यसबेला काफिरहरूका आँखा आश्चर्यचकित हुनेछन्, कि "अफशोच, हाम्रो दुर्भाग्य हामी यसतिर असावधान रह्यौं, बरु हामी नै अपराधी थियौं ।"

وَٱقْتَرَبَ ٱلْوَعْدُ ٱلْحَقُّ فَإِذَا هِيَ شَٰخِصَةٌ أَبْصَٰرُ ٱلَّذِينَ كَفَرُوا۟ يَٰوَيْلَنَا قَدْ كُنَّا فِى غَفْلَةٍ مِّنْ هَٰذَا بَلْ كُنَّا ظَٰلِمِينَ ﴿٩٧﴾

९८) (काफिरहरू !) तिमी र अल्लाह बाहेक जस-जसको तिमी पूजा गर्दछौ सबै नर्कका इन्धन हुनेछौ । तिमी सबै त्यसमा प्रवेश गर्नेछौ ।

إِنَّكُمْ وَمَا تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ حَصَبُ جَهَنَّمَ أَنتُمْ لَهَا وَٰرِدُونَ ﴿٩٨﴾

९९) यदि यिनीहरू सच्चा पूज्य भएको भए नर्कमा प्रवेश गर्ने थिएनन्, सबै त्यसमा सधैं बसिराख्ने छन् ।

لَوْ كَانَ هَٰٓؤُلَآءِ ءَالِهَةً مَّا وَرَدُوهَا ۖ وَكُلٌّ فِيهَا خَٰلِدُونَ ﴿٩٩﴾

१००) त्यहाँ तिनीहरू चिच्याइराखेका हुनेछन् र त्यहाँ केही पनि सुन्न सक्ने छैनन् ।

لَهُمْ فِيهَا زَفِيرٌ وَهُمْ فِيهَا لَا يَسْمَعُونَ ﴿١٠٠﴾

१०१) तर जसलाई हाम्रो तर्फबाट अघि नै पुरस्कारको वाचा भइसकेको छ, तिनीहरू त्यसबाट टाढा राखिनेछन् ।

إِنَّ ٱلَّذِينَ سَبَقَتْ لَهُم مِّنَّا ٱلْحُسْنَىٰٓ أُو۟لَٰٓئِكَ عَنْهَا مُبْعَدُونَ ﴿١٠١﴾

१०२) उनीहरूले त नर्कको आहट पनि सुन्नेछैनन् र जुन कुराको तिनीहरूलाई इच्छा हुन्छ त्यसैमा रमाइरहनेछन् ।

لَا يَسْمَعُونَ حَسِيسَهَا ۖ وَهُمْ فِى مَا ٱشْتَهَتْ أَنفُسُهُمْ خَٰلِدُونَ ﴿١٠٢﴾

لَا يَحْزُنُهُمُ الْفَزَعُ الْاَكْبَرُ وَتَتَلَقّٰىهُمُ الْمَلٰٓئِكَةُ ۗ
هٰذَا يَوْمُكُمُ الَّذِيْ كُنْتُمْ تُوْعَدُوْنَ ﴿١٠٣﴾

१०३) उनीहरूलाई (यस दिनको) ठूलो त्रासले पनि चिन्तित गर्नेछैन र फरिश्ताहरूले तिनीहरूको स्वागत गर्नेछन् (र भन्नेछन्) कि यही त्यो दिन हो जसको तिमीसित वाचा गर्ने गरिन्थ्यो ।

يَوْمَ نَطْوِي السَّمَآءَ كَطَيِّ السِّجِلِّ لِلْكُتُبِ ۚ كَمَا
بَدَاْنَآ اَوَّلَ خَلْقٍ نُّعِيْدُهٗ ۚ وَعْدًا عَلَيْنَا ۚ اِنَّا كُنَّا
فٰعِلِيْنَ ﴿١٠٤﴾

१०४) जुन दिन हामीले आकाशलाई यसरी बेर्नेछौं, जसरी पञ्जीकामा दस्तावेजका पानाहरू बेरिन्छन् । जसरी हामीले सृष्टिको प्रारम्भ गरेका थियौं त्यस्तै हामीले त्यसको पुनरावृत्ति गर्नेछौं । यो हाम्रो जिम्मामा भएको एउटा वाचा हो । निश्चय नै हामीले यो (पूरा) गर्नु नै छ ।

وَلَقَدْ كَتَبْنَا فِي الزَّبُوْرِ مِنْۢ بَعْدِ الذِّكْرِ اَنَّ
الْاَرْضَ يَرِثُهَا عِبَادِيَ الصّٰلِحُوْنَ ﴿١٠٥﴾

१०५) हामीले "ज़बूरमा" (दाऊदमाथि उत्रेको किताब) उपदेश पछि यो लेखिसकेका छौं कि धरतीको उत्तराधिकारी मेरा असल भक्तहरू हुनेछन् ।"

اِنَّ فِيْ هٰذَا لَبَلٰغًا لِّقَوْمٍ عٰبِدِيْنَ ﴿١٠٦﴾

१०६) उपासना गर्ने सेवकहरूको लागि यसमा एउटा ठूलो सन्देश छ ।

وَمَآ اَرْسَلْنٰكَ اِلَّا رَحْمَةً لِّلْعٰلَمِيْنَ ﴿١٠٧﴾

१०७) र (हे मोहम्मद स.अ. !) हामीले तपाईलाई सम्पूर्ण जगतको निम्ति सर्वथा दयाको प्रतीक बनाएर पठाएका छौं ।

قُلْ اِنَّمَا يُوْحٰٓى اِلَيَّ اَنَّمَآ اِلٰهُكُمْ اِلٰهٌ وَّاحِدٌ ۚ
فَهَلْ اَنْتُمْ مُّسْلِمُوْنَ ﴿١٠٨﴾

१०८) भनिदिनुस् "मेरो पासमा "वह्य" (अल्लाहको संदेश) आउँछ कि तिम्रो

पूज्य एउटै छ त के तिमी उसको आज्ञा पालन गर्नेवाला छौ ?

فَإِن تَوَلَّوْا فَقُلْ ءَاذَنتُكُمْ عَلَىٰ سَوَآءٍ ۖ وَإِنْ أَدْرِىٓ أَقَرِيبٌ أَم بَعِيدٌ مَّا تُوعَدُونَ ﴿١٠٩﴾

१०९) फेरि यदि यिनीहरू विमुख हुन्छन् भने भनिदिनुस् कि "मैले तिमी सबैलाई सामान्य रूपले सावधान गरिसकेको छु । मलाई यो कुरा थाहा छैन कि जुन कुराको तिमीसित वाचा गरिदैछ त्यो निकट छ वा टाढा"।

إِنَّهُۥ يَعْلَمُ ٱلْجَهْرَ مِنَ ٱلْقَوْلِ وَيَعْلَمُ مَا تَكْتُمُونَ ﴿١١٠﴾

११०) तर अल्लाह प्रत्यक्ष र परोक्ष सबै कुरा जान्दछ र जुन तिमी लुकाएर गर्दछौ । त्यसलाई पनि जान्दछ ।

وَإِنْ أَدْرِى لَعَلَّهُۥ فِتْنَةٌ لَّكُمْ وَمَتَٰعٌ إِلَىٰ حِينٍ ﴿١١١﴾

१११) मलाई यो पनि थाहा छैन कि कदाचित यो तिम्रो निम्ति एउटा परीक्षा हो र एउटा निश्चित समयसम्मको लागि फाइदा (पुऱ्याउनु) हो !

قَٰلَ رَبِّ ٱحْكُم بِٱلْحَقِّ ۗ وَرَبُّنَا ٱلرَّحْمَٰنُ ٱلْمُسْتَعَانُ عَلَىٰ مَا تَصِفُونَ ﴿١١٢﴾

११२) संदेष्टा (पैगम्बर) स्वयम्ले भने कि हे मेरो पालनकर्ता ! इन्साफका साथ निर्णय गरिदेऊ र हाम्रो पालनहार बडो दयावान छ, जसबाट मद्दतको लागि याचना गरिन्छ ती कुराहरूमा जुन तिमीले वर्णन गर्दछौ ।



# सूरतुल् हज्ज-२२



सूरतुल् हज्ज मदनी हो र यसमा ७८ आयतहरू र १० रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

يَاَيُّهَا النَّاسُ اتَّقُوْا رَبَّكُمْ ۚ اِنَّ زَلْزَلَةَ السَّاعَةِ شَيْءٌ عَظِيْمٌ ①

१) हे मानिसहरू ! आफ्नो पालनकर्तासित डर । निश्चय नै कियामतको भूकम्प साह्रै भयङ्कर कुरो हो ।

يَوْمَ تَرَوْنَهَا تَذْهَلُ كُلُّ مُرْضِعَةٍ عَمَّآ اَرْضَعَتْ وَتَضَعُ كُلُّ ذَاتِ حَمْلٍ حَمْلَهَا وَتَرَى النَّاسَ سُكٰرٰى وَمَا هُمْ بِسُكٰرٰى وَلٰكِنَّ عَذَابَ اللّٰهِ شَدِيْدٌ ②

२) जुन दिन त्यसलाई तिमीले देख्ने छौ । (अवस्था यो हुन्छ कि) प्रत्येक दूध ख्वाउने (आमा) आफ्ना दूध खाने बच्चाहरूलाई बिर्सि दिने छिन् र प्रत्येक गर्भवतीको गर्भपात भई जाने छ । र तिमीले मानिसहरूलाई नशा लगेको अवस्थामा देख्ने छौ, जबकि तिनीहरू नशा लागेको हुने छैनन् । तर अल्लाहको सजाय बडो कठोर कुरो हो ।

وَمِنَ النَّاسِ مَنْ يُّجَادِلُ فِى اللّٰهِ بِغَيْرِ عِلْمٍ وَّيَتَّبِعُ كُلَّ شَيْطٰنٍ مَّرِيْدٍ ③

३) केही मानिसहरूले अल्लाहको विषयमा ज्ञान न भए पनि कुरो बनाउँछन् र अवज्ञाकाारी शैतानको अनुशरण गर्दछन् ।

كُتِبَ عَلَيْهِ اَنَّهٗ مَنْ تَوَلَّاهُ فَاَنَّهٗ يُضِلُّهٗ وَيَهْدِيْهِ اِلٰى عَذَابِ السَّعِيْرِ ④

४) त्यसको लागि अल्लाको फैसला लेखिसकिएको छ कि जसले ऊसँग (शैतानसँग) मित्रताको सम्बन्ध राख्नेछ त्यसलाई उसले पथभ्रष्ट गरेर नै छाड्नेछ र त्यसलाई उसले

दन्कीराखेको आगोको यातनातिर लैजानेछ ।

५) हे मानिसहरू ! यदि तिमीलाई (मृत्यु पश्चात) पुर्नजीवित हुने विषयमा कुनै सन्देह छ भने सोच, हामीले तिमीलाई माटोबाट सृष्टि गऱ्यौं, अनि वीर्यबाट, अनि रगतको डल्लोबाट (भ्रुण) अनि मासुको डल्लोबाट जुन आकार दिइएको थियो जसको कुनै रूप थिएन ताकि हामीले तिमीलाई स्पष्ट पारिदिऊँ, र हामीले जसलाई चाहन्छौं एक निर्धारित समयसम्म आमाको पेटमा राखिरहन्छौं । अनि त्यसपछि तिमीलाई एउटा बच्चाको रूपमा दुनियाँमा ल्याउँछौं । अनि तिमीले आफ्नो युवावस्था प्राप्त गर र तिमी मध्ये कोही त पहिले नै मरिहाल्छन् र कोही बुढेसको जीर्ण अवस्थातिर लगिन्छन् । जसले गर्दा धेरै कुराको ज्ञान भएर पनि अज्ञान हुन्छन् । तिमीले देख्छौ कि जमीन सुखिसकेको बन्जर छ । फेरि जब हामीले त्यसमाथि पानीको वर्षा गराउँछौं तब त्यसमा हरियाली हुन्छ र त्यसमा सजीवता आउँछ र यो हरेक प्रकारको रुख बिरुवाबाट शोभायमान हुन्छ ।

يَٰٓأَيُّهَا ٱلنَّاسُ إِن كُنتُمۡ فِي رَيۡبٖ مِّنَ ٱلۡبَعۡثِ فَإِنَّا خَلَقۡنَٰكُم مِّن تُرَابٖ ثُمَّ مِن نُّطۡفَةٖ ثُمَّ مِنۡ عَلَقَةٖ ثُمَّ مِن مُّضۡغَةٖ مُّخَلَّقَةٖ وَغَيۡرِ مُخَلَّقَةٖ لِّنُبَيِّنَ لَكُمۡۚ وَنُقِرُّ فِي ٱلۡأَرۡحَامِ مَا نَشَآءُ إِلَىٰٓ أَجَلٖ مُّسَمّٗى ثُمَّ نُخۡرِجُكُمۡ طِفۡلٗا ثُمَّ لِتَبۡلُغُوٓاْ أَشُدَّكُمۡۖ وَمِنكُم مَّن يُتَوَفَّىٰ وَمِنكُم مَّن يُرَدُّ إِلَىٰٓ أَرۡذَلِ ٱلۡعُمُرِ لِكَيۡلَا يَعۡلَمَ مِنۢ بَعۡدِ عِلۡمٖ شَيۡـٔٗاۚ وَتَرَى ٱلۡأَرۡضَ هَامِدَةٗ فَإِذَآ أَنزَلۡنَا عَلَيۡهَا ٱلۡمَآءَ ٱهۡتَزَّتۡ وَرَبَتۡ وَأَنۢبَتَتۡ مِن كُلِّ زَوۡجِۭ بَهِيجٖ ۝٥

६) यो यसकारण हो कि अल्लाह नै सत्य छ र उसैले मृतकहरूलाई

ذَٰلِكَ بِأَنَّ ٱللَّهَ هُوَ ٱلۡحَقُّ وَأَنَّهُۥ يُحۡيِ ٱلۡمَوۡتَىٰ وَأَنَّهُۥ عَلَىٰ كُلِّ شَيۡءٖ قَدِيرٞ ۝٦

जीवित गर्दछ र उसलाई प्रत्येक कुराको लागि सामर्थ्य छ ।

७) र यो कि कियामत निश्चित रूपले आउनेवाला छ, यसमा कुनै सन्देह छैन र यो कि अवश्य अल्लाह तआला सबै मानिसहरूलाई, जुन कि कब्रमा(चिहानमा) छन्, पुनः जीवित पारी उठाउनेछ ।

وَّاَنَّ السَّاعَةَ اٰتِيَةٌ لَّا رَيْبَ فِيْهَا ۙ وَاَنَّ اللّٰهَ يَبْعَثُ مَنْ فِى الْقُبُوْرِ ۝٧

८) केही मानिसहरू जो कुनै ज्ञान, मार्गदर्शन र किताब बिना अल्लाहको बारेमा झगडा गर्दछन् ।

وَمِنَ النَّاسِ مَنْ يُّجَادِلُ فِى اللّٰهِ بِغَيْرِ عِلْمٍ وَّلَا هُدًى وَّلَا كِتٰبٍ مُّنِيْرٍ ۝٨

९) केही यस्ता छन् कि घमण्डले तर्कन्छन् ताकि अल्लाहको बाटोबाट विचलित गरिदियोस्, उसको लागि संसारमा अपमान छ र कियामतका दिन पनि हामीले उसलाई नर्कमा आगोको यातनाको स्वाद चखाउनेछौं ।

ثَانِىَ عِطْفِهٖ لِيُضِلَّ عَنْ سَبِيْلِ اللّٰهِ ۭ لَهٗ فِى الدُّنْيَا خِزْىٌ وَّنُذِيْقُهٗ يَوْمَ الْقِيٰمَةِ عَذَابَ الْحَرِيْقِ ۝٩

१०) "यो त्यस कर्मको कारणले हो जुन कि तिम्रा हातहरूले अगाडि पठाएका थिए र यसकारण कि अल्लाह भक्तहरू माथि अलिकति पनि अत्याचार गर्ने छैन ।

ذٰلِكَ بِمَا قَدَّمَتْ يَدٰكَ وَاَنَّ اللّٰهَ لَيْسَ بِظَلَّامٍ لِّلْعَبِيْدِ ۝١٠

११) केही मानिसहरू यस्तो पनि छन् जो कि एउटा छेउमा रहेर अल्लाहको उपासना गर्दछन् । यदि उसलाई लाभ पुग्यो भने त्यसबाट सन्तुष्ट हुने गर्दछन् र यदि कुनै विपत्ति आइपऱ्यो भने उसैबेला विमुख भइहाल्छन् । उनीहरूले

وَمِنَ النَّاسِ مَنْ يَّعْبُدُ اللّٰهَ عَلٰى حَرْفٍ ۚ فَاِنْ اَصَابَهٗ خَيْرُ اطْمَاَنَّ بِهٖ ۚ وَاِنْ اَصَابَتْهُ فِتْنَةُ انْقَلَبَ عَلٰى وَجْهِهٖ ۚ خَسِرَ الدُّنْيَا وَالْاٰخِرَةَ ۭ ذٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِيْنُ ۝١١

संसार पनि गुमाए र आखिरत पनि, यही हो खुल्ला घाटा ।

१२) (उनीहरूले) अल्लाहलाई छाडी त्यसलाई पुकार्दछन् जसले उनलाई न हानि पुऱ्याउन सक्छ र न त्यसलाई लाभ पुऱ्याउन सक्छ, यहि नै ठूलो मार्ग विचलन हो ।

يَدْعُوْا مِنْ دُوْنِ اللّٰهِ مَا لَا يَضُرُّهٗ وَمَا لَا يَنْفَعُهٗ ۚ
ذٰلِكَ هُوَ الضَّلٰلُ الْبَعِيْدُ ⑫

१३) त्यसलाई पुकार्दछन् जसबाट पुग्ने हानि त्यसबाट अपेक्षित लाभको अपेक्षा अधिक निकट छ । यी साह्रै नै नराम्रो संरक्षक हुन् र साह्रै नराम्रो साथी ।

يَدْعُوْا لَمَنْ ضَرُّهٗٓ اَقْرَبُ مِنْ نَّفْعِهٖ ۚ لَبِئْسَ
الْمَوْلٰى وَلَبِئْسَ الْعَشِيْرُ ⑬

१४) आस्थावान र असल कर्म गर्ने, मानिसहरूलाई अल्लाह यस्ता बगैंचाहरूमा प्रवेश गराउनेछ, जसमुनि नहरहरू बगिराखेका हुनेछन् निःसन्देह अल्लाहले जे चाहन्छ त्यो गर्दछ ।

اِنَّ اللّٰهَ يُدْخِلُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا
الصّٰلِحٰتِ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ
اِنَّ اللّٰهَ يَفْعَلُ مَا يُرِيْدُ ⑭

१५) जसले यो ठान्दछ कि अल्लाहले आफ्नो रसूलको मद्दत यस संसार र आखिरत दुवै ठाउँमा गर्नेछैन, त उसले अग्लो ठाउँमा आफ्नो घाँटीमा डोरी बाँधेर (आफ्नो) घाँटी काटोस्, अनि हेरोस् कि उसको चालले त्यो कुरा अलग भइहाल्छ जुन उसलाई छट्पटाई राखेको छ ।

مَنْ كَانَ يَظُنُّ اَنْ لَّنْ يَّنْصُرَهُ اللّٰهُ فِى
الدُّنْيَا وَالْاٰخِرَةِ فَلْيَمْدُدْ بِسَبَبٍ اِلَى السَّمَاۤءِ
ثُمَّ لْيَقْطَعْ فَلْيَنْظُرْ هَلْ يُذْهِبَنَّ كَيْدُهٗ مَا يَغِيْظُ ⑮

१६) यसैप्रकार हामीले यस कुरआनलाई स्पष्ट आयतहरूको रूपमा अवतरित

وَكَذٰلِكَ اَنْزَلْنٰهُ اٰيٰتٍۭ بَيِّنٰتٍ ۙ وَّاَنَّ اللّٰهَ يَهْدِيْ
مَنْ يُّرِيْدُ ⑯

गऱ्यौं र अल्लाहले जसलाई चाहन्छ मार्ग देखाउँछ ।

إِنَّ الَّذِينَ آمَنُوا وَالَّذِينَ هَادُوا وَالصَّابِئِينَ وَالنَّصَارَىٰ وَالْمَجُوسَ وَالَّذِينَ أَشْرَكُوا إِنَّ اللَّهَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿١٧﴾

१७) निःसन्देह जुन ईमानवाला मोमिनहरू र यहूदी र साबी र ईसाई र मजूसी र अल्लाहको साझेदार ठह्याउने (मुशिरकहरू), यी सबै मा कियामतको दिन अल्लाहले निसाफ गरिदिनेछ । अल्लाह हरेक कुरोको साक्षी छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يَسْجُدُ لَهُ مَن فِي السَّمَاوَاتِ وَمَن فِي الْأَرْضِ وَالشَّمْسُ وَالْقَمَرُ وَالنُّجُومُ وَالْجِبَالُ وَالشَّجَرُ وَالدَّوَابُّ وَكَثِيرٌ مِّنَ النَّاسِ ۖ وَكَثِيرٌ حَقَّ عَلَيْهِ الْعَذَابُ ۗ وَمَن يُهِنِ اللَّهُ فَمَا لَهُ مِن مُّكْرِمٍ ۚ إِنَّ اللَّهَ يَفْعَلُ مَا يَشَاءُ ۩ ﴿١٨﴾

१८) के तिमीले देखेनौ कि आकाशहरूमा भएका र पृथ्वीमा भएकाहरू सूर्य र चन्द्र र ताराहरू र पहाडहरू र रुखहरू र चौपायाहरू र धेरै जसो मानिसहरू अल्लाहलाई ढोग्दैछन् र धेरै यस्ता छन्, जसको सम्बन्धमा यातना प्रमाणित भइसकेको छ र जुन मानिसलाई अल्लाहले अपमानित गर्दछ, त्यसलाई कसैले प्रतिष्ठा प्रदान गर्नसक्दैन । निःसन्देह अल्लाहले जे चाहन्छ, गर्दछ ।

هَٰذَانِ خَصْمَانِ اخْتَصَمُوا فِي رَبِّهِمْ ۖ فَالَّذِينَ كَفَرُوا قُطِّعَتْ لَهُمْ ثِيَابٌ مِّن نَّارٍ يُصَبُّ مِن فَوْقِ رُءُوسِهِمُ الْحَمِيمُ ﴿١٩﴾

१९) यी दुई (समूह) आफ्नो पालनकर्ता को बारेमा विवाद गर्दछन्, अतः जुन मानिसहरूले कुफ्र गरे तिनीहरूको निमित्त आगोको वस्त्र काटिसकिएको छ । उनीहरूका टाउकोमाथी उम्लिराखेको पानी खन्याइने छ ।

يُصْهَرُ بِهِ مَا فِي بُطُونِهِمْ وَالْجُلُودُ ﴿٢٠﴾

२०) यसबाट जे जति उनका पेटमा भएका कुराहरू र छालाहरू पनि पग्लिहाल्नेछ ।

२१) र उनीहरूको दण्डका लागि फलामका हथौडाहरू हुनेछन् ।

وَلَهُم مَّقَامِعُ مِنْ حَدِيدٍ ﴿٢١﴾

२२) जतिखेर पनि उनीहरू आत्तिएर त्यहाँको कष्टबाट भाग्न चाहन्छन् त उतिखेर फेरि फर्काइनेछन् र भनिनेछ "आगोमा जल्ने यातनाको स्वाद चाखिराख"।

كُلَّمَا أَرَادُوا أَن يَخْرُجُوا مِنْهَا مِنْ غَمٍّ
أُعِيدُوا فِيهَا وَذُوقُوا عَذَابَ الْحَرِيقِ ﴿٢٢﴾

२३) (निःसन्देह) अल्लाहले ईमानवालाहरूलाई र असल कर्म गर्ने वालाहरूलाई, यस्ता स्वर्गका बगैंचाहरूमा प्रवेश गराउनेछ जसको रुखमुनि नहरहरू बगिरहेका हुनेछन् । त्यहाँ उनीहरू सुन र मोतीबाट आभूषित गरिनेछन् र त्यहाँ उनीहरूको भेषभूषा असली रेशमी हुनेछ ।

إِنَّ اللَّهَ يُدْخِلُ الَّذِينَ آمَنُوا وَعَمِلُوا
الصَّالِحَاتِ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ
يُحَلَّوْنَ فِيهَا مِنْ أَسَاوِرَ مِن ذَهَبٍ
وَلُؤْلُؤًا وَلِبَاسُهُمْ فِيهَا حَرِيرٌ ﴿٢٣﴾

२४) उनीहरूलाई पवित्र कुराको मार्गदर्शन गरियो र उनीहरूलाई प्रशंसित अल्लाहको मार्ग देखाई सकिएको छ ।

وَهُدُوا إِلَى الطَّيِّبِ مِنَ الْقَوْلِ وَهُدُوا إِلَىٰ
صِرَاطِ الْحَمِيدِ ﴿٢٤﴾

२५) जुन मानिसहरूले अविश्वास गरे र अल्लाहको मार्गबाट रोक्दछन् र त्यस प्रतिष्ठित मस्जिद कअ्बाबाट पनि, जसलाई हामीले मानिसहरूको निम्ति त्यहाँका बासिन्दा होस् वा बाहिरबाट आएका सबैका लागि समान गरिदिएका छौं जुन व्यक्तिले त्यस (प्रतिष्ठित मस्जिद) मा अत्याचारको साथ विभेद गर्न चाहन्छ भने, त्यसलाई हामीले कष्टपूर्ण यातनाको स्वाद चखाउनेछौं ।

إِنَّ الَّذِينَ كَفَرُوا وَيَصُدُّونَ عَن سَبِيلِ اللَّهِ
وَالْمَسْجِدِ الْحَرَامِ الَّذِي جَعَلْنَاهُ لِلنَّاسِ
سَوَاءً الْعَاكِفُ فِيهِ وَالْبَادِ ۚ وَمَن يُرِدْ فِيهِ
بِإِلْحَادٍ بِظُلْمٍ نُّذِقْهُ مِنْ عَذَابٍ أَلِيمٍ ﴿٢٥﴾

२६) स्मरण गर जब हामीले इब्राहीम (अलै)को निम्ति अल्लाहको घर (कअ्बा) ठेगाना बनायौं, यस आदेशको साथ कि मेरो दाँजोमा कसैलाई साझेदार नठहराउनु मेरो घरलाई तवाफ (परिक्रमा) गर्ने, उपासना गर्ने नमाज पढ्ने (रुकूअ् र सिज्दा गर्नेहरू) हरूको निम्ति पवित्र राख ।

وَإِذْ بَوَّأْنَا لِإِبْرَٰهِيمَ مَكَانَ ٱلْبَيْتِ أَن لَّا تُشْرِكْ بِى شَيْـًٔا وَطَهِّرْ بَيْتِىَ لِلطَّآئِفِينَ وَٱلْقَآئِمِينَ وَٱلرُّكَّعِ ٱلسُّجُودِ ﴿٢٦﴾

२७) र मानिसहरूमा हज्जको निम्ति उद्घोषणा गरिदिनु कि तिनीहरू तिम्रो पासमा टाढा-टाढाबाट, पैदल पनि आउने छन् र दुबला पातला ऊँटहरूबाट सवार भई अनेक बाटो भएर आउँनेछन् ।

وَأَذِّن فِى ٱلنَّاسِ بِٱلْحَجِّ يَأْتُوكَ رِجَالًا وَعَلَىٰ كُلِّ ضَامِرٍ يَأْتِينَ مِن كُلِّ فَجٍّ عَمِيقٍ ﴿٢٧﴾

२८) (तिनीहरूले) आफ्ना लाभ प्राप्त गर्न आऊन् र ती निश्चित दिनहरूमा ती चौपायाहरूमाथि अल्लाहको नाम लिऊँन्, जुन पाल्तू छन् । अनि त्यसबाट स्वयम् पनि खाऊ र गरीब निमुखाहरूलाई पनि खुवाऊ ।

لِّيَشْهَدُوا۟ مَنَٰفِعَ لَهُمْ وَيَذْكُرُوا۟ ٱسْمَ ٱللَّهِ فِىٓ أَيَّامٍ مَّعْلُومَٰتٍ عَلَىٰ مَا رَزَقَهُم مِّنۢ بَهِيمَةِ ٱلْأَنْعَٰمِ ۖ فَكُلُوا۟ مِنْهَا وَأَطْعِمُوا۟ ٱلْبَآئِسَ ٱلْفَقِيرَ ﴿٢٨﴾

२९) फेरि उनीहरूलाई आवश्यक छ कि आफ्ना फोहोर-मैला खतम पारुन् (कपाल इत्यादि सफा गरुन्) र आफ्ना कबोल गरेका कुराहरू (मन्नतहरू) पूरा गरुन् र अल्लाहको यस पूरातन घरको तवाफ (परिक्रमा) गरुन् ।

ثُمَّ لْيَقْضُوا۟ تَفَثَهُمْ وَلْيُوفُوا۟ نُذُورَهُمْ وَلْيَطَّوَّفُوا۟ بِٱلْبَيْتِ ٱلْعَتِيقِ ﴿٢٩﴾

३०) यी कुराहरूको ध्यान राख र जो कोही अल्लाहद्वारा निर्धारित मर्यादाहरूको

ذَٰلِكَ وَمَن يُعَظِّمْ حُرُمَٰتِ ٱللَّهِ فَهُوَ خَيْرٌ لَّهُۥ عِندَ رَبِّهِۦ ۗ وَأُحِلَّتْ لَكُمُ ٱلْأَنْعَٰمُ إِلَّا مَا يُتْلَىٰ

عَلَيْكُمْ فَاجْتَنِبُوا الرِّجْسَ مِنَ الْأَوْثَانِ وَاجْتَنِبُوا قَوْلَ الزُّورِ ﴿٣٠﴾

आदर गर्दछ, यो उसको पालनकर्ता कहाँ उसैको निम्ति राम्रो हुनेछ, र तिम्रा निम्ति चौपाया पशुहरू हलाल गरिएका छन्, ती बाहेक जुन कि तिमीलाई भनिसकिएको छ । तसर्थ तिमीहरूले मूर्तिहरूको अपवित्रताबाट बच्नुपर्छ र झूठो कुराहरूबाट पनि बच्नुपर्छ ।

حُنَفَاءَ لِلَّهِ غَيْرَ مُشْرِكِينَ بِهِ ۚ وَمَن يُشْرِكْ بِاللَّهِ فَكَأَنَّمَا خَرَّ مِنَ السَّمَاءِ فَتَخْطَفُهُ الطَّيْرُ أَوْ تَهْوِي بِهِ الرِّيحُ فِي مَكَانٍ سَحِيقٍ ﴿٣١﴾

३१) अल्लाहको एकात्मकतालाई स्वीकार गर्दै उसको साथमा साझेदार नठहराउँदै र जुन अल्लाहको साथमा साझेदार ठहराउँन्छ त्यो मानिस यस्तो छ कि जस्तो आकाशबाट खसिसकेको, अब त्यसलाई चाहे कुनै पंक्षीले लगिदेओस् अथवा वायुले कुनै दूरस्त स्थानमा फ्याँकिदिनेछ ।

ذَٰلِكَ وَمَن يُعَظِّمْ شَعَائِرَ اللَّهِ فَإِنَّهَا مِن تَقْوَى الْقُلُوبِ ﴿٣٢﴾

३२) यो सुन्यौ अब यी कुराहरूलाई ध्यान देऊ । जुन व्यक्तिले अल्लाहका निशानीहरूको आदर र सम्मान गर्दछ, निःसन्देह ती कुराहरू उसको हृदयको धर्मपरायणता सित सम्बन्ध राख्दछन् ।

لَكُمْ فِيهَا مَنَافِعُ إِلَىٰ أَجَلٍ مُّسَمًّى ثُمَّ مَحِلُّهَا إِلَى الْبَيْتِ الْعَتِيقِ ﴿٣٣﴾

३३) यसमा एक निश्चित समयसम्मको लागि तिम्रा निम्ति फाइदाहरू छन् । अनि उनीहरूलाई हलाल गर्ने ठाउँ (कुर्बानीको लागि) कअ्बा नै हो ।

وَلِكُلِّ أُمَّةٍ جَعَلْنَا مَنسَكًا لِّيَذْكُرُوا اسْمَ اللَّهِ عَلَىٰ مَا رَزَقَهُم مِّن بَهِيمَةِ الْأَنْعَامِ ۗ فَإِلَٰهُكُمْ إِلَٰهٌ وَاحِدٌ فَلَهُ أَسْلِمُوا ۗ وَبَشِّرِ الْمُخْبِتِينَ ﴿٣٤﴾

३४) र हामीले प्रत्येक समुदायको लागि कुर्बानीको तरिका निर्धारित गरेका छौं ताकि अल्लाहले जुन पशुहरू

उनीहरूलाई दिएको छ त्यसमाथि, (हलाल गर्ने बेला) अल्लाहको नाम लेउन् । अतः बुझी राख तिम्रो पूज्य एउटै छ । तसर्थ उसैको आज्ञाकारी बन र विनम्रता अपनाउनेहरूलाई शुभ-सूचना सुनाई दिनु ।

الَّذِينَ إِذَا ذُكِرَ اللَّهُ وَجِلَتْ قُلُوبُهُمْ وَالصَّابِرِينَ عَلَىٰ مَا أَصَابَهُمْ وَالْمُقِيمِي الصَّلَاةِ وَمِمَّا رَزَقْنَاهُمْ يُنفِقُونَ ﴿٣٥﴾

३५) यी त्यस्ता मानिसहरू हुन् कि जब अल्लाहको स्मरण गरिन्छ तब तिनका मुटुहरू काम्छन् र जुन दुःख उनीहरू माथि आउँछ त्यसमा धैर्यले काम गर्छन् र नमाजलाई कायम राख्दछन्, र जे जति हामीले दिएका छौं त्यसबाट पनि खर्च गर्दछन् ।

وَالْبُدْنَ جَعَلْنَاهَا لَكُم مِّن شَعَائِرِ اللَّهِ لَكُمْ فِيهَا خَيْرٌ ۖ فَاذْكُرُوا اسْمَ اللَّهِ عَلَيْهَا صَوَافَّ ۖ فَإِذَا وَجَبَتْ جُنُوبُهَا فَكُلُوا مِنْهَا وَأَطْعِمُوا الْقَانِعَ وَالْمُعْتَرَّ ۚ كَذَٰلِكَ سَخَّرْنَاهَا لَكُمْ لَعَلَّكُمْ تَشْكُرُونَ ﴿٣٦﴾

३६) र कुर्बानीका उँटहरूलाई पनि हामीले तिम्रो निम्ति अल्लाहका निशानी मध्ये बनाएका छौं । तिनीहरूमा तिम्रो निम्ति फाइदाहरू छन् तसर्थ (कुर्बानी गर्ने बेलामा) पंक्तिमा बाँधेर उनीहरू माथि अल्लाहको नाम पुकार । जब एकापट्टि ढलिहाल्छन् त त्यसबाट (आफू पनि) खाऊ र सन्तोष गरी बसिराख्ने गरीब र सवालीहरूलाई खुवाऊ यस्तै (ती पशुहरूलाई) हामीले तिम्रो अधीनस्थ गरिदिएका छौं ताकि तिमीले कृतज्ञता प्रकट गर ।

لَن يَنَالَ اللَّهَ لُحُومُهَا وَلَا دِمَاؤُهَا وَلَٰكِن يَنَالُهُ التَّقْوَىٰ مِنكُمْ ۚ كَذَٰلِكَ سَخَّرَهَا لَكُمْ لِتُكَبِّرُوا اللَّهَ عَلَىٰ مَا هَدَاكُمْ ۗ وَبَشِّرِ الْمُحْسِنِينَ ﴿٣٧﴾

३७) कुर्बानीको मासु अल्लाह छेउ पुग्दैन न त उनीहरूको रगत अपितु उसलाई त तिम्रो हृदयको धर्म परायणता पुग्दछ । यसप्रकार उसले

उनीहरूलाई तिम्रो अधीनमा गरेको छ, ताकि तिमीले उसको मार्गदर्शनका लागि अल्लाहको प्रशंसा गर । र असल कर्म गर्नेहरूलाई शुभ-सूचना सुनाई दिनु ।

إِنَّ اللَّهَ يُدَافِعُ عَنِ الَّذِينَ آمَنُوا ۗ إِنَّ اللَّهَ لَا يُحِبُّ كُلَّ خَوَّانٍ كَفُورٍ ﴿٣٨﴾

३८) (हे पैग़म्बर स.अ. !) सुनी राख सच्चा मोमिनहरूबाट शत्रुलाई स्वयम् अल्लाहले हटाइराख्दछ । अल्लाहले कदापि कुनै विश्वासघाती, कृतघ्नलाई मनपराउँदैन ।

أُذِنَ لِلَّذِينَ يُقَاتَلُونَ بِأَنَّهُمْ ظُلِمُوا ۚ وَإِنَّ اللَّهَ عَلَىٰ نَصْرِهِمْ لَقَدِيرٌ ﴿٣٩﴾

३९) जुन (मुसलमानहरू) सित (काफिरहरू) युद्ध गरिराखेका छन्, उनीहरूलाई पनि सामना गर्न अनुमति छ । किनभने उनीहरू अत्याचार (बाट) पीडीत भइराखेका छन् र निश्चय नै अल्लाह उनीहरूको सहायताको निम्ति पूर्ण रूपले सामर्थ्यवान छ ।

الَّذِينَ أُخْرِجُوا مِن دِيَارِهِم بِغَيْرِ حَقٍّ إِلَّا أَن يَقُولُوا رَبُّنَا اللَّهُ ۗ وَلَوْلَا دَفْعُ اللَّهِ النَّاسَ بَعْضَهُم بِبَعْضٍ لَّهُدِّمَتْ صَوَامِعُ وَبِيَعٌ وَصَلَوَاتٌ وَمَسَاجِدُ يُذْكَرُ فِيهَا اسْمُ اللَّهِ كَثِيرًا ۗ وَلَيَنصُرَنَّ اللَّهُ مَن يَنصُرُهُ ۗ إِنَّ اللَّهَ لَقَوِيٌّ عَزِيزٌ ﴿٤٠﴾

४०) यी ती मानिसहरू हुन् जसलाई आफ्ना घरहरूबाट बिनाकारण निकालियो, मात्र यस कुराको लागि कि तिनीहरू भन्छन् कि "हाम्रो पालनकर्ता अल्लाह हो ।" यदि अल्लाहले मानिसहरूलाई एक अर्कोबाट नहटाइराखेको भए उपासना स्थलहरू गिर्जाघर र मस्जिद, यहूदी प्रार्थना भवन र ती मस्जिदहरू पनि ढालिने थिए जसमा अल्लाहको बेसरी नाम लिइन्छ । अल्लाहले अवश्य नै उसको सहायता गर्ने छ,

जसले उसको सहायता गर्दछ निश्चय नै अल्लाह ठूलो बलशाली सर्वशक्ति सम्पन्न छ ।

اَلَّذِيْنَ اِنْ مَّكَّنّٰهُمْ فِى الْاَرْضِ اَقَامُوا الصَّلٰوةَ وَاٰتَوُا الزَّكٰوةَ وَاَمَرُوْا بِالْمَعْرُوْفِ وَنَهَوْا عَنِ الْمُنْكَرِ ۗ وَلِلّٰهِ عَاقِبَةُ الْاُمُوْرِ ﴿٤١﴾

४१) यी ती मानिसहरू हुन् कि यदि धरतीमा हामीले उनीहरूलाई सत्ता प्रदान गर्दछौं भने उनीहरू नमाज कायम गर्नेछन् र जकात दिनेछन् र भलाईको आदेश गर्नेछन् र नराम्रो कामबाट रोक्नेछन् र सबै कुराहरूको अन्तिम परिणाम अल्लाहको हातमा छ ।

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّعَادٌ وَّثَمُوْدُ ۙ ﴿٤٢﴾

४२) र यदि यिनीहरूले तपाईलाई झूठ्ठा भन्दछन् भने (कुनै आश्चर्य छैन) उनीहरू भन्दा पहिला नूहको कौम र आद र समूद (ले पनि त्यस्तै गरे)

وَقَوْمُ اِبْرٰهِيْمَ وَقَوْمُ لُوْطٍ ۙ ﴿٤٣﴾

४३) र इब्राहीम (अलै) को समुदाय र लूतको समुदायले पनि (झूठ ठाने)

وَّاَصْحٰبُ مَدْيَنَ ۚ وَكُذِّبَ مُوْسٰى فَاَمْلَيْتُ لِلْكٰفِرِيْنَ ثُمَّ اَخَذْتُهُمْ ۚ فَكَيْفَ كَانَ نَكِيْرِ ﴿٤٤﴾

४४) र मद्यनवालाहरूले पनि आ-आफ्ना पैगम्बरहरूलाई झूठ्ठा भनिसकेका छन्, मूसालाई पनि झूठ्ठा भनिसकिएको छ । किन्तु मैले इन्कार गर्नेहरूलाई अलिकति मोहलत दिएँ, अनि तिनीहरूलाई समाति हालें, त (हेरिहाल की) फेरि मेरो सजाय कस्तो (कठोर) थियो ?

فَكَاَيِّنْ مِّنْ قَرْيَةٍ اَهْلَكْنٰهَا وَهِيَ ظَالِمَةٌ فَهِيَ خَاوِيَةٌ عَلٰى عُرُوْشِهَا وَبِئْرٍ مُّعَطَّلَةٍ وَّقَصْرٍ مَّشِيْدٍ ﴿٤٥﴾

४५) धेरै बस्तीहरू छन् जसलाई कि हामीले नष्ट गरिहालेका थियौं किनभने तिनीहरू अत्यचारी थिए, ती सबै आफ्नो छत मुनि घोप्टे

परेका छन् । र (धेरै) इनारहरू बेकार छन् र (धेरै) पक्की र उच्च महलहरू सुनसान भएका छन् ।

أَفَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَتَكُونَ لَهُمْ قُلُوبٌ يَعْقِلُونَ بِهَا أَوْ آذَانٌ يَسْمَعُونَ بِهَا ۖ فَإِنَّهَا لَا تَعْمَى الْأَبْصَارُ وَلَٰكِن تَعْمَى الْقُلُوبُ الَّتِي فِي الصُّدُورِ ﴿٤٦﴾

४६) के तिनीहरूले धरतीमा हिंडडुल गरेनन्, ताकि उनका हृदयले यी कुराहरू बुझ्न सक्थे, अथवा कान (यस्ता) हुन्थे कि जसबाट सुन्न सक्थे । कुरो यो छ कि आँखा मात्र अन्धो हुँदैन बरु ती हृदयहरू पनि, जुन छातीहरूमा छन्, अन्धो बन्दछन् ।

وَيَسْتَعْجِلُونَكَ بِالْعَذَابِ وَلَن يُخْلِفَ اللَّهُ وَعْدَهُ ۚ وَإِنَّ يَوْمًا عِندَ رَبِّكَ كَأَلْفِ سَنَةٍ مِّمَّا تَعُدُّونَ ﴿٤٧﴾

४७) र तिनीहरूले तपाईंसित यातनाको निम्ति हतार गरिराखेका छन् ! अल्लाहले कदापि आफ्नो वचनलाई टार्ने छैन , किन्तु तपाईंको पालनकर्ता नजिक एकदिन, तिम्रो गणना अनुसार, एकहजार वर्षको हुनेछ ।

وَكَأَيِّن مِّن قَرْيَةٍ أَمْلَيْتُ لَهَا وَهِيَ ظَالِمَةٌ ثُمَّ أَخَذْتُهَا وَإِلَيَّ الْمَصِيرُ ﴿٤٨﴾

४८) कति यस्ता बस्तीहरू थिए जसलाई मैले मोहलत दिएँ र तिनीहरू उल्लघंनकारी थिए । अनि मैले उनीहरूलाई समातिहालें र मतिर नै फर्किआउनु पर्नेछ ।

قُلْ يَا أَيُّهَا النَّاسُ إِنَّمَا أَنَا لَكُمْ نَذِيرٌ مُّبِينٌ ﴿٤٩﴾

४९) (हे पैगम्बर !) भनिदिनुस् कि मानिसहरू ! म तिमीहरूलाई खुल्ला रूपले चेतावानी दिनेवाला नै हुँ ।

فَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٥٠﴾

५०) तसर्थ जसले विश्वास ल्याएका छन् र असल काम गरे, उनीहरूको निम्ति क्षमादान छ र सम्मानपूर्ण जीविका छ ।

५१) र जुन मानिसहरूले हाम्रा निशानीहरूलाई तल्लोस्तरमा झार्ने प्रयास गरे, तिनीहरू नर्कवाला हुन् ।

وَالَّذِيْنَ سَعَوْا فِيْٓ اٰيٰتِنَا مُعٰجِزِيْنَ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ۝٥١

५२) तपाईभन्दा अगाडि जुन रसूल र नबीलाई हामीले पठायौं, त उनीहरू सित यस्तो भयो कि जतिखेर पनि उनले कुनै इच्छा गरे शैतानले उनको कामनामा केही मिसाई दियो । यसप्रकार जेजति पनि शैतानले मिसाउँछ अल्लाहले त्यसलाई हटाइदिन्छ । अनि अल्लाहले आफ्ना आयतहरूलाई सुदृढ गरिदिन्छ । अल्लाह सर्वज्ञ, बडो तत्वदर्शी छ ।

وَمَآ اَرْسَلْنَا مِنْ قَبْلِكَ مِنْ رَّسُوْلٍ وَّلَا نَبِيٍّ اِلَّآ اِذَا تَمَنّٰٓى اَلْقَى الشَّيْطٰنُ فِيْٓ اُمْنِيَّتِهٖ ۚ فَيَنْسَخُ اللّٰهُ مَا يُلْقِي الشَّيْطٰنُ ثُمَّ يُحْكِمُ اللّٰهُ اٰيٰتِهٖ ۗ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ۝٥٢

५३) यो यसकारण हो कि जुन (बाधा) शैतानले पुर्‍याउँछ, त्यसलाई उनीहरूको निम्ति, जसका हृदयहरूमा रोगहरू छन् र जसका हृदय कठोर छन्, अल्लाहले परीक्षाको माध्यम बनाउँछ । निःसन्देह अत्याचारीहरू नितान्त विरोधमा व्यस्त छन् ।

لِّيَجْعَلَ مَا يُلْقِي الشَّيْطٰنُ فِتْنَةً لِّلَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ وَّالْقَاسِيَةِ قُلُوْبُهُمْ ۗ وَاِنَّ الظّٰلِمِيْنَ لَفِيْ شِقَاقٍۢ بَعِيْدٍ ۝٥٣

५४) र यसकारण पनि कि जसलाई ज्ञान प्रदान गरिएको छ, तिनीहरू विश्वास गरुन् कि यो तपाईको पालनकर्ताको तर्फबाटै नै सत्य छ, । अतः उनीहरू यसमाथि ईमान ल्याऊन् र उनीहरूका हृदय अल्लाहको अगाडि नतमस्तक होउन् र जुन मानिसहरूले ईमान ल्याएका छन्, अल्लाहले उनीहरूलाई सोझो बाटोतिर मार्गनिर्देशित गर्दछ ।

وَّلِيَعْلَمَ الَّذِيْنَ اُوْتُوا الْعِلْمَ اَنَّهُ الْحَقُّ مِنْ رَّبِّكَ فَيُؤْمِنُوْا بِهٖ فَتُخْبِتَ لَهٗ قُلُوْبُهُمْ ۗ وَاِنَّ اللّٰهَ لَهَادِ الَّذِيْنَ اٰمَنُوْٓا اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ۝٥٤

५५) काफिरहरू सदैव यस अल्लाहको सन्देश तर्फबाट सन्देहमा परिरहनेछन्, यहाँसम्म कि कियामतको समय एक्कासी उनीमाथि आइपर्छ अथवा एउटा अशुभ दिनको यातना उनीमाथि आइपर्छ ।

وَلَا يَزَالُ الَّذِينَ كَفَرُوا فِي مِرْيَةٍ مِّنْهُ حَتَّىٰ تَأْتِيَهُمُ السَّاعَةُ بَغْتَةً أَوْ يَأْتِيَهُمْ عَذَابُ يَوْمٍ عَقِيمٍ ﴿٥٥﴾

५६) त्यस दिन अल्लाहकै शासन हुनेछ । उसैले तिनीहरूको बीच इन्साफ गर्नेछ । त जुन मानिसहरूले ईमान ल्याए र असल कर्म गरे, उनीहरू पुरस्कारले भरिएको बहिश्तहरू (स्वर्गैमा) मा हुनेछन् ।

الْمُلْكُ يَوْمَئِذٍ لِّلَّهِ يَحْكُمُ بَيْنَهُمْ ۚ فَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فِي جَنَّاتِ النَّعِيمِ ﴿٥٦﴾

५७) र जुन मानिसहरूले ईमान ल्याउन इन्कार गरे र हाम्रा आयतहरूलाई झूठा भने तिनीहरूका निम्ति अपमान जनक यातना हुनेछ ।

وَالَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا فَأُولَٰئِكَ لَهُمْ عَذَابٌ مُّهِينٌ ﴿٥٧﴾

५८) र जुन मानिसहरूले अल्लाहको मार्गमा हिजरत गरे अर्थात् घरबार छोडे, अनि मारिए वा मरिहाले, त अल्लाहले अवश्य नै उनीहरूलाई राम्रो आजीविका प्रदान गर्नेछ । र निःसन्देह अल्लाह नै उत्तम आजीविका प्रदान गर्नेवाला छ ।

وَالَّذِينَ هَاجَرُوا فِي سَبِيلِ اللَّهِ ثُمَّ قُتِلُوا أَوْ مَاتُوا لَيَرْزُقَنَّهُمُ اللَّهُ رِزْقًا حَسَنًا ۚ وَإِنَّ اللَّهَ لَهُوَ خَيْرُ الرَّازِقِينَ ﴿٥٨﴾

५९) उसले उनीहरूलाई यस्तो ठाउँमा पुऱ्याउनेछ जसबाट उनीहरू प्रसन्न भइहाल्नेछन् । निश्चय नै अल्लाह सर्वज्ञ, अत्यन्त सहनशील छ ।

لَيُدْخِلَنَّهُم مُّدْخَلًا يَرْضَوْنَهُ ۗ وَإِنَّ اللَّهَ لَعَلِيمٌ حَلِيمٌ ﴿٥٩﴾

६०) कुरो यही हो । जसले प्रतिशोध

ذَٰلِكَ ۖ وَمَنْ عَاقَبَ بِمِثْلِ مَا عُوقِبَ بِهِ

ثُمَّ بُغِيَ عَلَيْهِ لَيَنْصُرَنَّهُ اللَّهُ ۚ إِنَّ اللَّهَ لَعَفُوٌّ غَفُورٌ ﴿٦٠﴾

लियो, त्यस्तै जस्तो कि उसको साथमा गरिएको थियो र पुनः त्यसमाथि ज्यादती गरियो भने अल्लाहले अवश्य नै उसको सहायता गर्नेछ , निश्चय नै अल्लाह माफ गरिदिनेवाला अत्यन्त क्षमाशील छ ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ يُولِجُ اللَّيْلَ فِي النَّهَارِ وَيُولِجُ النَّهَارَ فِي اللَّيْلِ وَأَنَّ اللَّهَ سَمِيعٌ بَصِيرٌ ﴿٦١﴾

६१) यो यसकारणले कि अल्लाह रातलाई दिनमा प्रवेश गराउँदछ र दिनलाई रातमा प्रवेश गराउँदछ । र निःसन्देह अल्लाह सुन्दछ, देख्दछ ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ هُوَ الْحَقُّ وَأَنَّ مَا يَدْعُونَ مِنْ دُونِهِ هُوَ الْبَاطِلُ وَأَنَّ اللَّهَ هُوَ الْعَلِيُّ الْكَبِيرُ ﴿٦٢﴾

६२) यी सबै यसकारणले कि अल्लाह नै सत्य छ र उस बाहेक जसलाई पनि यिनीहरूले पुकार्दछन् त्यो असत्य छ, र यो कि अल्लाह नै सर्वोच्च र महान छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ أَنْزَلَ مِنَ السَّمَاءِ مَاءً فَتُصْبِحُ الْأَرْضُ مُخْضَرَّةً ۗ إِنَّ اللَّهَ لَطِيفٌ خَبِيرٌ ﴿٦٣﴾

६३) के तिमीले देखेनौ कि अल्लाह आकाशबाट पानी वर्षाउँछ तब धरती हराभरा भइहाल्छ निःसन्देह अल्लाह दयालु र सबै कुराको ज्ञाता छ ।

لَهُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۗ وَإِنَّ اللَّهَ لَهُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٦٤﴾

६४) उसैको हो जे आकाशहरूमा र जेजति धरतीमा छन् । निःसन्देह अल्लाह नै निष्पृह र प्रशंसनीय छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ سَخَّرَ لَكُمْ مَا فِي الْأَرْضِ وَالْفُلْكَ تَجْرِي فِي الْبَحْرِ بِأَمْرِهِ وَيُمْسِكُ السَّمَاءَ أَنْ تَقَعَ عَلَى الْأَرْضِ إِلَّا بِإِذْنِهِ ۗ إِنَّ اللَّهَ بِالنَّاسِ لَرَءُوفٌ رَحِيمٌ ﴿٦٥﴾

६५) के तपाई देख्नु भएन कि धरतीमा जेजति छ त्यसलाई अल्लाहले नै तिम्रो निम्ति बशीभूत गरिहालेको छ र डुङ्गा पनि उसको आदेशबाट समुद्रमा चल्छन् र उसैले आकाशलाई

उसको आदेश बिना धरतीमा खस्नबाट रोकेको छ । निःसन्देह अल्लाह मानिसहरूको लागि बडो करुणाशील र दयावान छ ।

وَهُوَ الَّذِيٓ أَحْيَاكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يُحْيِيكُمْ ۗ إِنَّ الْإِنسَانَ لَكَفُورٌ ﴿٦٦﴾

६६) उसैले तिमीलाई जीवन प्रदान गर्‍यो । अनि उसैले तिमीलाई मृत्यु दिन्छ र फेरि उसैले तिमीलाई जीवित पार्नेछ । निःसन्देह मानव अकृतज्ञ छ ।

لِّكُلِّ أُمَّةٍ جَعَلْنَا مَنسَكًا هُمْ نَاسِكُوهُ ۖ فَلَا يُنَازِعُنَّكَ فِي الْأَمْرِ ۚ وَادْعُ إِلَىٰ رَبِّكَ ۖ إِنَّكَ لَعَلَىٰ هُدًى مُّسْتَقِيمٍ ﴿٦٧﴾

६७) प्रत्येक समुदायको निम्ति हामीले उपासनाको एउटा रीति निर्धारित गरिसकेका छौं जसको पालन उनीहरूले गर्दछन् । तसर्थ यिनीहरूले तपाईसित यस कुरामा झगडा नगरुन् र तपाईले (मानिसहरूलाई) आफ्नो पालनकर्तातिर बोलाउँदै गर्नु , निःसन्देह तिमी सोझो मार्गमा छौ ।

وَإِن جَادَلُوكَ فَقُلِ اللَّهُ أَعْلَمُ بِمَا تَعْمَلُونَ ﴿٦٨﴾

६८) फेरि पनि यदि यिनीहरूले तपाईसित झगडा गर्दछन् भने, तपाई भनिदिनुस् कि तिमीहरूको कर्म अल्लाह राम्ररी जान्दछ ।

اللَّهُ يَحْكُمُ بَيْنَكُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كُنتُمْ فِيهِ تَخْتَلِفُونَ ﴿٦٩﴾

६९) निःसन्देह तिमीहरूको विवादहरूको निर्णय अल्लाहले कियामतको दिन गरिदिनेछ ।

أَلَمْ تَعْلَمْ أَنَّ اللَّهَ يَعْلَمُ مَا فِي السَّمَاءِ وَالْأَرْضِ ۗ إِنَّ ذَٰلِكَ فِي كِتَابٍ ۚ إِنَّ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرٌ ﴿٧٠﴾

७०) के तपाईलाई थाहा भएन कि जे जति आकाश र धरतीमा छ अल्लाह सबै जान्दछ । निश्चय नै त्यो

(कर्मपत्र) एउटा किताबमा अंकित छ, निःसन्देह त्यो (निर्णय) अल्लाहको निम्ति अत्यन्त सरल छ ।

وَيَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَمْ يُنَزِّلْ بِهِ سُلْطَانًا وَمَا لَيْسَ لَهُم بِهِ عِلْمٌ ۗ وَمَا لِلظَّالِمِينَ مِن نَّصِيرٍ ﴿٧١﴾

७१) र तिनीहरूले अल्लाह बाहेक उनीहरूको उपासना गर्दछन्, जसको निम्ति नत कुनै अल्लाहद्वारा प्रमाण उतरेको छ नत उनीहरूलाई नै त्यसको विषयमा कुनै ज्ञान छ र यी अत्याचारीहरूको कोही मद्दत गर्ने छैन ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ تَعْرِفُ فِي وُجُوهِ الَّذِينَ كَفَرُوا الْمُنكَرَ ۖ يَكَادُونَ يَسْطُونَ بِالَّذِينَ يَتْلُونَ عَلَيْهِمْ آيَاتِنَا ۗ قُلْ أَفَأُنَبِّئُكُم بِشَرٍّ مِّن ذَٰلِكُمُ ۗ النَّارُ وَعَدَهَا اللَّهُ الَّذِينَ كَفَرُوا ۖ وَبِئْسَ الْمَصِيرُ ﴿٧٢﴾

७२) जब उनीहरू सामु हाम्रा स्पष्ट आयातहरू पढेर सुनाइन्छन् तब तपाईले तिनीहरूको अनुहारहरूमा स्पष्ट रूपले अप्रसन्नताका चिन्हहरू देख्नु हुनेछ । यस्तो लाग्छ कि जसले उनीहरूलाई हाम्रो आयातहरू पढेर सुनाउँछन्, उनीहरूमाथि जाइलाग्नेछन् । भनिदिनुस् कि के म तिनीहरूलाई यस भन्दा पनि बढी नराम्रो समाचार देऊँ । त्यो नर्कको आगो हो जसको वचन अल्लाहले काफिरहरूसित गरिसकेको छ, र त्यो अत्यन्त नराम्रो ठाउँ हो ।

يَا أَيُّهَا النَّاسُ ضُرِبَ مَثَلٌ فَاسْتَمِعُوا لَهُ ۚ إِنَّ الَّذِينَ تَدْعُونَ مِن دُونِ اللَّهِ لَن يَخْلُقُوا ذُبَابًا وَلَوِ اجْتَمَعُوا لَهُ ۖ وَإِن يَسْلُبْهُمُ الذُّبَابُ شَيْئًا لَّا يَسْتَنقِذُوهُ مِنْهُ ۚ ضَعُفَ الطَّالِبُ وَالْمَطْلُوبُ ﴿٧٣﴾

७३) हे मानिसहरू ! एउटा दृष्टान्त वर्णन गरिन्छ, त्यसलाई ध्यानपूर्वक सुन, कि तिमीले अल्लाह बाहेक जस जसलाई पुकार्दछौ, तिनीहरूले एउटा झिंगा पनि बनाउन सक्दैनन् । यद्यपि त्यसको निम्ति

सबै एकत्रित भइहालुन् र यदि झिङ्गाले उनीहरूसित कुनै कुरा खोसेर लिएर जान्छ भने त्यसबाट तिनीहरूले त्यसलाई छोडाउन पनि सक्दैनन् । जो याचक छ ऊ पनि असमर्थ छ र जसबाट (तिनीहरूले) याचना गर्दछन् ऊ पनि असहाय छ ।

مَا قَدَرُوا اللّٰهَ حَقَّ قَدْرِهٖ ۭ اِنَّ اللّٰهَ لَقَوِيٌّ عَزِيْزٌ ۝٧٤

७४) उनीहरूले अल्लाहको हैसियत अनुसार उसको सम्मान गर्न जानेनन् । अल्लाह निश्चय नै ठूलो बलवान् र अधिपत्यशाली छ ।

اَللّٰهُ يَصْطَفِيْ مِنَ الْمَلٰۗىِٕكَةِ رُسُلًا وَّمِنَ النَّاسِ ۭ اِنَّ اللّٰهَ سَمِيْعٌۢ بَصِيْرٌ ۝٧٥

७५) अल्लाहले फरिश्ताहरूमध्येबाट र मानिसहरू मध्येबाट सन्देशबाहक रोज्दछ । निश्चय नै अल्लाह सबै कुरा सुन्दछ, देख्दछ ।

يَعْلَمُ مَا بَيْنَ اَيْدِيْهِمْ وَمَا خَلْفَهُمْ ۭ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ۝٧٦

७६) जुन उनको अगाडि छ र जुन उनको पछाडि छ अल्लाह सबै जान्दछ । र सबै कामहरू अल्लाहतिर नै फर्कन्छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا ارْكَعُوْا وَاسْجُدُوْا وَاعْبُدُوْا رَبَّكُمْ وَافْعَلُوا الْخَيْرَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ۝٧٧

७७) हे मोमिनहरू नतमस्तक हुने र ढोग्ने गर र आफ्नो पालनकर्ताको उपासनामा लागी रहने गर र भलो कार्य गर्ने गर ताकि तिमीलाई सफलता प्राप्त होस् ।

وَجَاهِدُوْا فِي اللّٰهِ حَقَّ جِهَادِهٖ ۭ هُوَ اجْتَبٰىكُمْ وَمَا جَعَلَ عَلَيْكُمْ فِي الدِّيْنِ مِنْ حَرَجٍ ۭ مِلَّةَ اَبِيْكُمْ اِبْرٰهِيْمَ ۭ هُوَ سَمّٰىكُمُ الْمُسْلِمِيْنَ ڏ مِنْ قَبْلُ وَفِيْ هٰذَا لِيَكُوْنَ

७८) र अल्लाहको मार्गमा त्यस्तै जिहाद गर, जस्तो कि जिहाद गर्नुपर्दछ । उसैले तिमीलाई रोजेको छ र धर्मको कुरामा तिमीमाथि कुनै कुरा

الرَّسُوْلُ شَهِيْدًا عَلَيْكُمْ وَتَكُوْنُوْا شُهَدَآءَ عَلَى النَّاسِ ۖ فَاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَاعْتَصِمُوْا بِاللّٰهِ ۗ هُوَ مَوْلٰىكُمْ ۚ فَنِعْمَ الْمَوْلٰى وَنِعْمَ النَّصِيْرُ ﴿٧٨﴾

संकुचित पारेको छैन र तिम्रो निम्ति तिम्रो बाबु इब्राहीम (अ.) को धर्मलाई रुचायो । उसले यसभन्दा अगाडिनै र यस कुरआनमा पनि तिम्रो नाम मुस्लिम (आज्ञाकारी) राखेको छ । यस उद्देश्यले ताकि रसूल तिम्रो निम्ति साक्षी होऊन् । र तिमी अरु मानिसहरूको साक्षी होऊ । अतः तिमीले नमाजको आयोजना गर र जकात देऊ, र अल्लाहसँग आफ्नो सम्बन्धलाई बलियो रूपले समाति राख उही नै तिम्रो सबभन्दा राम्रो संरक्षक र मालिक हो । आहा कति राम्रो मालिक र कती उत्तम मद्दत गर्नेवाला छ ।



# सूरतुल् मुमिनून-२३




सूरतुल् मुमिनून मक्की हो र यसमा एक सय अठार: आयतहरू र ६ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) निःसन्देह ईमानवालाहरू सफल भइहाले,

قَدْ اَفْلَحَ الْمُؤْمِنُوْنَ ①

२) जसले आफ्नो नमाज़मा विनम्रता अपनाउँछन् ।

الَّذِيْنَ هُمْ فِيْ صَلَاتِهِمْ خٰشِعُوْنَ ②

३) र जो अनर्गल कुराहरूबाट पन्छिन्छन्,

وَالَّذِيْنَ هُمْ عَنِ اللَّغْوِ مُعْرِضُوْنَ ③

४) र जो ज़कात दिन्छन् ।

وَالَّذِيْنَ هُمْ لِلزَّكٰوةِ فٰعِلُوْنَ ④

५) र जो आफ्ना गुप्ताङ्गहरूको रक्षा गर्दछन् ।

وَالَّذِيْنَ هُمْ لِفُرُوْجِهِمْ حٰفِظُوْنَ ⑤

६) तर आफ्नो पत्नीहरू र आफ्नो अधीनस्थ दासी स्वास्नीहरू सँग सम्बन्ध राख्दा उनीहरू निन्दनीय छैनन् ।

اِلَّا عَلٰٓى اَزْوَاجِهِمْ اَوْ مَا مَلَكَتْ اَيْمَانُهُمْ فَاِنَّهُمْ غَيْرُ مَلُوْمِيْنَ ⑥

७) जो कोही यस बाहेक अरु केही चाहन्छन् त्यस्ता मानिसहरू सीमाको उल्लघंन गर्नेवाला हुनेछन् ।

فَمَنِ ابْتَغٰى وَرَآءَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْعٰدُوْنَ ⑦

८) र जसले आफ्ना अमानतहरू (नासो) र आफ्नो प्रतिज्ञाको रक्षा गर्दछन् ।

وَالَّذِيْنَ هُمْ لِاَمٰنٰتِهِمْ وَعَهْدِهِمْ رٰعُوْنَ ⑧

९) र जसले आफ्नो नमाज़हरूको रक्षा गर्दछन् ।

وَالَّذِيْنَ هُمْ عَلٰى صَلَوٰتِهِمْ يُحَافِظُوْنَ ⑨

१०) यी नै (मानिसहरू) वारिस हुनेछन् ।

اُولٰٓئِكَ هُمُ الْوٰرِثُوْنَ ⑩

الَّذِيْنَ يَرِثُوْنَ الْفِرْدَوْسَ ؕ هُمْ فِيْهَا خٰلِدُوْنَ ﴿١١﴾

११) जसले स्वर्गको (फिर्दौसको) वारिस हुनेछन् । र त्यसमा सधैं रहनेछन् ।

وَلَقَدْ خَلَقْنَا الْاِنْسَانَ مِنْ سُلٰلَةٍ مِّنْ طِيْنٍ ۚ ﴿١٢﴾

१२) र निःसन्देह हामीले मानवलाई माटोको तत्वबाट सृष्टि गरेका हौं ।

ثُمَّ جَعَلْنٰهُ نُطْفَةً فِيْ قَرَارٍ مَّكِيْنٍ ۪ ﴿١٣﴾

१३) अनि उसलाई एउटा बलियो सुरक्षित ठाउँमा शुक्र बनाएर राख्यौं ।

ثُمَّ خَلَقْنَا النُّطْفَةَ عَلَقَةً فَخَلَقْنَا الْعَلَقَةَ مُضْغَةً فَخَلَقْنَا الْمُضْغَةَ عِظٰمًا فَكَسَوْنَا الْعِظٰمَ لَحْمًا ۗ ثُمَّ اَنْشَاْنٰهُ خَلْقًا اٰخَرَ ؕ فَتَبٰرَكَ اللّٰهُ اَحْسَنُ الْخٰلِقِيْنَ ﴿١٤﴾

१४) फेरि शुक्रको एउटा डल्लो बनायौं, फेरि डल्लोबाट भ्रुण बनायौं, अनि भ्रुणबाट हाडहरू बनायौं, अनि हाडहरूमाथि मासुको पत्र राख्यौं, अनि त्यसलाई नयाँ आकारमा बनाइदियौं तसर्थ अल्लाह साह्रै नै बर्कतवाला,(कल्याणकारी) सबभन्दा उत्तम स्रष्टा हो ।

ثُمَّ اِنَّكُمْ بَعْدَ ذٰلِكَ لَمَيِّتُوْنَ ﴿١٥﴾

१५) अनि यस पश्चात निश्चित रूपले तिमी सबै मर्छौ ।

ثُمَّ اِنَّكُمْ يَوْمَ الْقِيٰمَةِ تُبْعَثُوْنَ ﴿١٦﴾

१६) अनि क़ियामतका दिन तिमी निश्चय नै उठाइने छौ ।

وَلَقَدْ خَلَقْنَا فَوْقَكُمْ سَبْعَ طَرَآئِقَ ۖ وَمَا كُنَّا عَنِ الْخَلْقِ غٰفِلِيْنَ ﴿١٧﴾

१७) हामीले तिम्रो माथि सात आकाशहरू सृष्टि गरेका छौं र हामी प्राणीहरूबाट असावधान छैनौं ।

وَاَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءًۢ بِقَدَرٍ فَاَسْكَنّٰهُ فِى الْاَرْضِ ۖ وَاِنَّا عَلٰى ذَهَابٍۢ بِهٖ لَقٰدِرُوْنَ ﴿١٨﴾

१८) र हामीले आकाशबाट एउटा ठीक अन्दाजले पानी बर्षाउँछौं, अनि हामीले त्यसलाई धर्तीमा रोक्छौं, र त्यसलाई विलुप्त गर्ने सामर्थ्य पनि हामीमा छ ।

فَاَنْشَاْنَا لَكُمْ بِهٖ جَنّٰتٍ مِّنْ نَّخِيْلٍ وَّاَعْنَابٍ ۘ لَكُمْ فِيْهَا فَوَاكِهُ كَثِيْرَةٌ وَّمِنْهَا تَاْكُلُوْنَ ﴿١٩﴾

१९) अनि हामीले त्यसै पानीबाट तिम्रो निम्ति खजूर र अङ्गूरका बगैंचाहरू

उत्पन्न गऱ्यौं । तिम्रा निम्ति त्यसमा धेरै फल-फूल छन् र तिनैबाट तिमीले खान्छौ ।

وَشَجَرَةً تَخْرُجُ مِن طُورِ سَيْنَاءَ تَنبُتُ بِالدُّهْنِ وَصِبْغٍ لِّلْآكِلِينَ ﴿٢٠﴾

२०) र त्यो रुख (पनि हामीले नै सृष्टि गरेका छौं ।) जुन “तूरे सीना” पहाडबाट उत्पन्न हुन्छ जुन निम्ति तेल र सालन लिएर उम्रन्छ ।

وَإِنَّ لَكُمْ فِي الْأَنْعَامِ لَعِبْرَةً ۖ نُّسْقِيكُم مِّمَّا فِي بُطُونِهَا وَلَكُمْ فِيهَا مَنَافِعُ كَثِيرَةٌ وَمِنْهَا تَأْكُلُونَ ﴿٢١﴾

२१) र निश्चय नै तिम्रा निम्ति चौपायहरूमा पनि धेरै शिक्षा छ, तिनीहरूको पेटबाट हामीले तिमीलाई दूध खुवाउँछौं । र तिम्रो निम्ति तिनीहरूमा धेरै फाइदाहरू छन् र तिनीहरू मध्ये केहीलाई तिमी खान्छौ पनि ।

وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُونَ ﴿٢٢﴾

२२) र तिनीहरूमाथी र डुङ्गाहरूमा तिमी सवार हुन्छौ ।

وَلَقَدْ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِ فَقَالَ يَا قَوْمِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ ۖ أَفَلَا تَتَّقُونَ ﴿٢٣﴾

२३) निःसन्देह हामीले नूहलाई उनको समुदायतिर रसूल बनाएर पठायौं, र उनले तिनीहरूसित भनेकि हे समुदायका मानिसहरू ! अल्लाहकै पूजा गर, उस बाहेक तिम्रो अरु कोही पूज्य छैन, के तिमी डर्दैनौ ।

فَقَالَ الْمَلَأُ الَّذِينَ كَفَرُوا مِن قَوْمِهِ مَا هَٰذَا إِلَّا بَشَرٌ مِّثْلُكُمْ يُرِيدُ أَن يَتَفَضَّلَ عَلَيْكُمْ وَلَوْ شَاءَ اللَّهُ لَأَنزَلَ مَلَائِكَةً مَّا سَمِعْنَا بِهَٰذَا فِي آبَائِنَا الْأَوَّلِينَ ﴿٢٤﴾

२४) तब उनको समुदायको नायकले जो काफिर थिए, स्पष्टसंग भन्नथाले: कि यो त तिमी जस्तै मानिस हो, तिमी माथि श्रेष्ठता प्राप्त गर्न चाहन्छ र यदि अल्लाहले चाहेको भए कुनै फरिश्ताहरूलाई (स्वर्गदूत) पठाउने थियो । हामीले त आफ्नो

पूर्वजहरूबाट यो कुरा कहिल्यै पनि सुनेनौं ।

إِنْ هُوَ إِلَّا رَجُلٌۢ بِهِۦ جِنَّةٌ فَتَرَبَّصُوا۟ بِهِۦ حَتَّىٰ حِينٍ ﴿٢٥﴾

२५) यो त पक्कै उन्माद ग्रस्त व्यक्ति हो अतः एक निश्चित अवधिसम्म तिमीले यसलाई छूट देऊ ।

قَالَ رَبِّ ٱنصُرْنِى بِمَا كَذَّبُونِ ﴿٢٦﴾

२६) (नूहले) प्रार्थना गरे कि हे पालनकर्ता ! उनीहरूले मलाई झूठा भनेका छन्, तिमीले मेरो मद्दत गर ।

فَأَوْحَيْنَآ إِلَيْهِ أَنِ ٱصْنَعِ ٱلْفُلْكَ بِأَعْيُنِنَا وَوَحْيِنَا فَإِذَا جَآءَ أَمْرُنَا وَفَارَ ٱلتَّنُّورُ ۙ فَٱسْلُكْ فِيهَا مِن كُلٍّ زَوْجَيْنِ ٱثْنَيْنِ وَأَهْلَكَ إِلَّا مَن سَبَقَ عَلَيْهِ ٱلْقَوْلُ مِنْهُمْ ۖ وَلَا تُخَـٰطِبْنِى فِى ٱلَّذِينَ ظَلَمُوٓا۟ ۖ إِنَّهُم مُّغْرَقُونَ ﴿٢٧﴾

२७) तब हामीले उनीतिर "वह्य" पठायौं कि हाम्रो आँखाको अगाडि र हाम्रो "वह्य" अनुसार एउटा डुङ्गा बनाऊ, अनि जब हाम्रो आदेश आउँछ र जब पानीको बाढी आउँछ तब प्रत्येक प्रजातिहरूमध्येबाट एक-एक जोडी त्यसमा राखिहाल, र आफन्तहरूलाई पनि, तर उनी बाहेक जसको विरुद्ध हामीले निर्णय दिइसकेका छौं र अत्याचारीहरूको विषयमा मसित कुरा नगर्नु । तिनीहरू त डुबाइने नै छन् ।

فَإِذَا ٱسْتَوَيْتَ أَنتَ وَمَن مَّعَكَ عَلَى ٱلْفُلْكِ فَقُلِ ٱلْحَمْدُ لِلَّهِ ٱلَّذِى نَجَّىٰنَا مِنَ ٱلْقَوْمِ ٱلظَّـٰلِمِينَ ﴿٢٨﴾

२८) र जब तिमी र तिम्रा साथीहरू डुङ्गामा राम्रोसंग बसिहाल्छौ तब (अल्लाह प्रति आभार प्रकट गर्नु र) भन्नु कि प्रशंसा अल्लाहकै लागि हो, जसले कि हामीलाई अत्याचारीहरूबाट छुटकारा प्रदान गऱ्यो ।

وَقُل رَّبِّ أَنزِلْنِى مُنزَلًا مُّبَارَكًا وَأَنتَ خَيْرُ ٱلْمُنزِلِينَ ﴿٢٩﴾

२९) र त्यो पनि प्रार्थना गर्नु कि हे पालनकर्ता ! हामीलाई कल्याणकारी

ठाउँमा उतार्नु र तिमी नै सबैभन्दा राम्रो उतार्ने वाला हौ ।

إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ وَإِن كُنَّا لَمُبْتَلِينَ ﴿٣٠﴾

३०) निःसन्देह यस (घटना) मा निशानीहरू छन् र हामीले त परीक्षा गर्नु छ ।

ثُمَّ أَنشَأْنَا مِن بَعْدِهِمْ قَرْنًا آخَرِينَ ﴿٣١﴾

३१) फेरि उनीहरू पश्चात हामीले अरु समुदायहरू पनि सृष्टि गर्‍यौं ।

فَأَرْسَلْنَا فِيهِمْ رَسُولًا مِّنْهُمْ أَنِ اعْبُدُوا اللَّهَ مَا لَكُم مِّنْ إِلَٰهٍ غَيْرُهُ أَفَلَا تَتَّقُونَ ﴿٣٢﴾

३२) फेरि उनीहरू मध्येबाटै पैगम्बर सन्देष्टा पठायौं, कि तिमीहरू सबै अल्लाहको पूजा गर, उस बाहेक तिम्रो कोही पूज्य छैन । अनि के तिमी डर्दैनौ ?

وَقَالَ الْمَلَأُ مِن قَوْمِهِ الَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِلِقَاءِ الْآخِرَةِ وَأَتْرَفْنَاهُمْ فِي الْحَيَاةِ الدُّنْيَا مَا هَٰذَا إِلَّا بَشَرٌ مِّثْلُكُمْ يَأْكُلُ مِمَّا تَأْكُلُونَ مِنْهُ وَيَشْرَبُ مِمَّا تَشْرَبُونَ ﴿٣٣﴾

३३) अनि उनको समुदायका सरदारहरूले जो काफिर थिए र आखिरतको आगमनलाई झूठा ठान्दथे र जसलाई हामीले सांसारिक जीवनमा सुख प्रदान गरेका थियौं, तिनीहरूले जवाफ दिन थाले: कि यो त तिमी जस्तै एउटा मानिस हो । जुन किसिमले खाना तिमीले खान्छौ, त्यस्तै प्रकारको खाना यसले पनि खान्छ, र जुन पानी तिमी पिउँदछौ, त्यस्तै यसले पनि पिउँछ ।

وَلَئِنْ أَطَعْتُم بَشَرًا مِّثْلَكُمْ إِنَّكُمْ إِذًا لَّخَاسِرُونَ ﴿٣٤﴾

३४) यदि तिमीले आफू जस्तै एउटा मानिसले भनेको मान्यौ भने तिमी धेरै घाटामा परिहाल्छौ ।

أَيَعِدُكُمْ أَنَّكُمْ إِذَا مِتُّمْ وَكُنتُمْ تُرَابًا وَعِظَامًا أَنَّكُم مُّخْرَجُونَ ﴿٣٥﴾

३५) के यसले तिमीसित यस कुराको वचन गर्दछ कि जब तिमी मरेर हाड र माटो भइहाल्छौ तब तिमी फेरि जिन्दा गरिने छौ ?

| | |
|---|---|
| ३६) होइन-होइन जुन कुराको तिमीलाई वचन दिइन्छ, त्यो धेरै धेरै टाढा छ । | هَيْهَاتَ هَيْهَاتَ لِمَا تُوعَدُونَ ﴿٣٦﴾ |
| ३७) जिन्दगी भनेको यही हाम्रो संसारिक जीवन नै हो, हामी मर्दै र बाँच्दै रहनेछौं र हामी फेरि उठाइने छैनौं । | إِنْ هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوتُ وَنَحْيَا وَمَا نَحْنُ بِمَبْعُوثِينَ ﴿٣٧﴾ |
| ३८) यो त यस्तो मान्छे हो जसले कि अल्लाहको बारेमा मनगढन्ते कुरा गर्दछ र यसको कुरामाथि हामीले ईमान ल्याउने छैनौं । | إِنْ هُوَ إِلَّا رَجُلٌ افْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا وَمَا نَحْنُ لَهُ بِمُؤْمِنِينَ ﴿٣٨﴾ |
| ३९) (पैगम्बरले) भने: कि पालनकर्ता ! उनीहरूले मलाई झूठा ठान्दछन्, तिमीले मेरो सहायता गर । | قَالَ رَبِّ انصُرْنِي بِمَا كَذَّبُونِ ﴿٣٩﴾ |
| ४०) जवाफ आयो यिनीहरूले शीघ्र नै लज्जित हुने छन् । | قَالَ عَمَّا قَلِيلٍ لَّيُصْبِحُنَّ نَادِمِينَ ﴿٤٠﴾ |
| ४१) अन्तत: गत्वा न्यायको माँग अनुसार तिनीहरूलाई एउटा प्रचण्ड चित्कारले समातिहाल्यो र तिनीहरूलाई कूडा-करकट बनाई हाल्यौ । अत: धिक्कार छ यस्ता अत्याचारीहरूलाई । | فَأَخَذَتْهُمُ الصَّيْحَةُ بِالْحَقِّ فَجَعَلْنَاهُمْ غُثَاءً ۚ فَبُعْدًا لِّلْقَوْمِ الظَّالِمِينَ ﴿٤١﴾ |
| ४२) अनि हामीले तिनीहरू पश्चात अन्य धेरै समुदायहरू (नस्ल)लाई सृष्टि गर्‍यौं । | ثُمَّ أَنشَأْنَا مِن بَعْدِهِمْ قُرُونًا آخَرِينَ ﴿٤٢﴾ |
| ४३) न कुनै पनि समुदाय आफ्नो निर्धारित समयभन्दा अगाडि जान सक्तछ न पछाडि रहन सक्तछ । | مَا تَسْبِقُ مِنْ أُمَّةٍ أَجَلَهَا وَمَا يَسْتَأْخِرُونَ ﴿٤٣﴾ |
| ४४) अनि हामीले (एकपछि अर्को) निरन्तर | ثُمَّ أَرْسَلْنَا رُسُلَنَا تَتْرَا ۖ كُلَّ مَا جَاءَ أُمَّةً رَّسُولُهَا |

كَذَّبُوهُ فَأَتْبَعْنَا بَعْضَهُم بَعْضًا وَجَعَلْنَٰهُمْ أَحَادِيثَ ۚ فَبُعْدًا لِّقَوْمٍ لَّا يُؤْمِنُونَ ﴿٤٤﴾

आफ्नो रसूलहरू पठायौं । जहिले पनि कुनै समुदायमा उसको रसूल आयो त्यसका मानिसहरूले त्यसलाई असत्य भने । अतः हामीले एकलाई अर्काको पछाडि (विनाशको लागि) लगाउँदै गऱ्यौं र हामीले उनीहरूलाई यस्तो गरिहाल्यौं, कि उनीहरू कथाहरूको रूपमा मात्र बाँकी रहे । तसर्थ धिक्कार छ तिनीहरू माथि जसले ईमान ल्याउँदैनन् ।

ثُمَّ أَرْسَلْنَا مُوسَىٰ وَأَخَاهُ هَٰرُونَ بِـَٔايَٰتِنَا وَسُلْطَٰنٍ مُّبِينٍ ﴿٤٥﴾

४५) अनि हामीले "मूसा" (अ.) र उनका भाइ "हारून" (अ.) लाई आफ्ना निशानीहरू र स्पष्ट प्रमाणहरू दिएर पठायौं ।

إِلَىٰ فِرْعَوْنَ وَمَلَإِيْهِۦ فَٱسْتَكْبَرُوا۟ وَكَانُوا۟ قَوْمًا عَالِينَ ﴿٤٦﴾

४६) फिरऔन र त्यसको सरदारहरूतिर तब उनीहरूले घमण्ड गरे, र उनीहरू अट्टेरी नै थिए ।

فَقَالُوٓا۟ أَنُؤْمِنُ لِبَشَرَيْنِ مِثْلِنَا وَقَوْمُهُمَا لَنَا عَٰبِدُونَ ﴿٤٧﴾

४७) (अनि तिनीहरू) भन्न थाले: कि के हामीले आफू जस्तै दुईजना मानिसहरू माथि ईमान ल्याउँछौं, जबकि उनको समुदाय पनि हाम्रो अधीनमा छ ।

فَكَذَّبُوهُمَا فَكَانُوا۟ مِنَ ٱلْمُهْلَكِينَ ﴿٤٨﴾

४८) अतः उनीहरूले ती दुईटैलाई झूठा भने र अन्तमा तिनीहरू पनि नष्ट हुनेहरूमा शम्मिलित भइहाले ।

وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ لَعَلَّهُمْ يَهْتَدُونَ ﴿٤٩﴾

४९) र हामीले त मूसा(अलै.)लाई किताब प्रदान गऱ्यौं, ताकि उनीहरू सही मार्गदर्शन प्राप्त गर्न सकुन् ।

وَجَعَلْنَا ابْنَ مَرْيَمَ وَأُمَّهُ آيَةً وَآوَيْنَاهُمَا إِلَىٰ رَبْوَةٍ ذَاتِ قَرَارٍ وَمَعِينٍ ﴿٥٠﴾

५०) हामीले ''मरियम'' र उनको छोरा (ईसा) लाई एउटा निशानी बनाएका थियौं र उनीहरूलाई एउटा उच्च ठाउँमा जुन बस्न लायक थियो र जहाँ स्वच्छ पानी बगिराखेको थियो, त्यहाँ शरण प्रदान गर्‍यौं,

يَا أَيُّهَا الرُّسُلُ كُلُوا مِنَ الطَّيِّبَاتِ وَاعْمَلُوا صَالِحًا ۖ إِنِّي بِمَا تَعْمَلُونَ عَلِيمٌ ﴿٥١﴾

५१) हे पैगम्बरहरू ! पवित्र कुरा खाऊ र असल कर्म गर । जुन क्रियाकलाप तिमीले गर्दछौ, त्यो मलाई थाहा छ ।

وَإِنَّ هَٰذِهِ أُمَّتُكُمْ أُمَّةً وَاحِدَةً وَأَنَا رَبُّكُمْ فَاتَّقُونِ ﴿٥٢﴾

५२) तिम्रो यो धर्म निश्चित रूपले वास्तवमा एउटै धर्म हो । र म तिम्रो पालनकर्ता हूँ, तसर्थ मसित डर ।

فَتَقَطَّعُوا أَمْرَهُمْ بَيْنَهُمْ زُبُرًا ۖ كُلُّ حِزْبٍ بِمَا لَدَيْهِمْ فَرِحُونَ ﴿٥٣﴾

५३) किन्तु उनीहरूले स्वयम् आफ्नो काम (धर्म) लाई परस्पर टुक्रा-टुक्रा गरी हाले । प्रत्येक समूह त्यसैमा मग्न छ जुन उसको पासमा छ ।

فَذَرْهُمْ فِي غَمْرَتِهِمْ حَتَّىٰ حِينٍ ﴿٥٤﴾

५४) तसर्थ तपाईले उनीहरूलाई एउटा निश्चित समयसम्म उनीहरूकै अज्ञानतामा रहन दिनुस् ।

أَيَحْسَبُونَ أَنَّمَا نُمِدُّهُمْ بِهِ مِنْ مَالٍ وَبَنِينَ ﴿٥٥﴾

५५) के यिनीहरूले यो सम्भनछन् कि, हामीले जुन तिनीहरूको सन्तान र धन बढाई रहेका छौं,

نُسَارِعُ لَهُمْ فِي الْخَيْرَاتِ ۚ بَلْ لَا يَشْعُرُونَ ﴿٥٦﴾

५६) त यो उनीहरूको हितको निम्ति शीघ्रता गरी राखेका छौं । होइन, बरु उनीहरूलाई यसको अनुभूति छैन ।

إِنَّ الَّذِينَ هُمْ مِنْ خَشْيَةِ رَبِّهِمْ مُشْفِقُونَ ﴿٥٧﴾

५७) निःसन्देह जुन मानिसहरू आफ्नो पालनकर्तासित तर्सन्छन् ।

وَالَّذِيْنَ هُمْ بِاٰيٰتِ رَبِّهِمْ يُؤْمِنُوْنَ ۝٥٨

५८) र जसले आफ्नो पालनकर्ताका प्रतीकहरूमाथि आस्था राख्दछन् ।

وَالَّذِيْنَ هُمْ بِرَبِّهِمْ لَا يُشْرِكُوْنَ ۝٥٩

५९) र जसले आफ्नो पालनकर्तासित अरु कसैको साझेदारी ठहराउँदैनन् ।

وَالَّذِيْنَ يُؤْتُوْنَ مَآ اٰتَوْا وَّقُلُوْبُهُمْ وَجِلَةٌ اَنَّهُمْ اِلٰى رَبِّهِمْ رٰجِعُوْنَ ۝٦٠

६०) र जे दिन सक्दछन् दिन्छन् र उनीहरूको हृदय यस कुराबाट काम्ने गर्दछन् कि उनीहरूलाई आफ्नो पालनकर्तातिर फर्केर जानुछ ।

اُولٰٓئِكَ يُسٰرِعُوْنَ فِى الْخَيْرٰتِ وَهُمْ لَهَا سٰبِقُوْنَ ۝٦١

६१) यी नै ती मानिसहरू हुन्, जसले भलोको काममा शीघ्रता गर्दछन् र यही उनको निम्ति अग्रसर रहनेवाला छन् ।

وَلَا نُكَلِّفُ نَفْسًا اِلَّا وُسْعَهَا وَلَدَيْنَا كِتٰبٌ يَّنْطِقُ بِالْحَقِّ وَهُمْ لَا يُظْلَمُوْنَ ۝٦٢

६२) हामीले कुनैपनि व्यक्तिलाई उसको क्षमताभन्दा बढी कष्ट दिँदैनौं । र हाम्रो साथमा यस्तो किताब छ जुन सत्य बोल्दछ र ती (मानिसहरू) माथि केहि अत्याचार गरिनेछैन ।

بَلْ قُلُوْبُهُمْ فِيْ غَمْرَةٍ مِّنْ هٰذَا وَلَهُمْ اَعْمَالٌ مِّنْ دُوْنِ ذٰلِكَ هُمْ لَهَا عٰمِلُوْنَ ۝٦٣

६३) तर उनीहरूका हृदय यी (कुराहरू) तिर अज्ञानतामा परिराखेका छन्, र यस बाहेक अरु कर्महरू छन् जुन् कि यिनीहरू गर्दै गर्नेछन् ।

حَتّٰٓى اِذَآ اَخَذْنَا مُتْرَفِيْهِمْ بِالْعَذَابِ اِذَا هُمْ يَجْـَٔرُوْنَ ۝٦٤

६४) यहाँसम्म कि जब हामीले यिनीहरूमध्ये सम्पन्न मानिसहरूलाई यातनामा समात्छौं त तिनीहरू त्यतिबेला विलाप गर्न थाल्नेछन् ।

لَا تَجْـَٔرُوا الْيَوْمَ اِنَّكُمْ مِّنَّا لَا تُنْصَرُوْنَ ۝٦٥

६५) आज विलाप नगर, निश्चय नै तिमीले हाम्रो विरुद्ध कुनै सहायता पाउने छैनौ'',

६६) मेरा आयतहरू तिम्रो सामु पढेर सुनाइन्थे, तैपनि तिमीले उल्टै फर्किहाल्थ्यौ ।

قَدْ كَانَتْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَكُنتُمْ عَلَىٰ أَعْقَابِكُمْ تَنكِصُونَ ﴿٦٦﴾

६७) अकडका साथ र बकवास गर्दै त्यसलाई छाडि दिन्थ्यौ ।

مُسْتَكْبِرِينَ بِهِ سَامِرًا تَهْجُرُونَ ﴿٦٧﴾

६८) के उनीहरूले यस कुरामाथि ध्यानै दिएनन् ? वा उनीहरू नजिक त्यो आयो जुन उनको बाबु बाजे नजिक आएको थिएन ?

أَفَلَمْ يَدَّبَّرُوا الْقَوْلَ أَمْ جَاءَهُم مَّا لَمْ يَأْتِ آبَاءَهُمُ الْأَوَّلِينَ ﴿٦٨﴾

६९) वा यिनीहरूले आफ्नो पैगम्बरलाई चिनेनन् यसकारण उसलाई मान्दैनन् ।

أَمْ لَمْ يَعْرِفُوا رَسُولَهُمْ فَهُمْ لَهُ مُنكِرُونَ ﴿٦٩﴾

७०) वा यो भन्छन् कि यो उन्मादी हो । जबकि उसले उनीहरूको सामु सत्य कुरा लिएर आएको छ । हो, उनीहरू मध्ये अधिकांशलाई सत्य अप्रिय छ ।

أَمْ يَقُولُونَ بِهِ جِنَّةٌ ۚ بَلْ جَاءَهُم بِالْحَقِّ وَأَكْثَرُهُمْ لِلْحَقِّ كَارِهُونَ ﴿٧٠﴾

७१) यदि सत्य, उनीहरूको इच्छाको पछि- पछि हिँड्ने भएको भए समस्त आकाश र धर्ती र जे जति उनीहरूको बीचमा छ, सबैमा विगार उत्पन्न भइहाल्ने थियो । होइन, बरु सत्य यो हो कि हामीले उनीहरूको सामु उनीहरूको (भागको) उपदेश पुऱ्याई दिएका छौं । तर उनीहरू आफ्नो उपदेशबाट मुख फर्काइरहेका छन् ।

وَلَوِ اتَّبَعَ الْحَقُّ أَهْوَاءَهُمْ لَفَسَدَتِ السَّمَاوَاتُ وَالْأَرْضُ وَمَن فِيهِنَّ ۚ بَلْ أَتَيْنَاهُم بِذِكْرِهِمْ فَهُمْ عَن ذِكْرِهِم مُّعْرِضُونَ ﴿٧١﴾

७२) के तपाईले उनीहरूसित केही पारिश्रमिक माँगी रहनु भएको छ ? याद राख्नुस् तपाईको स्वामीबाट

أَمْ تَسْأَلُهُمْ خَرْجًا فَخَرَاجُ رَبِّكَ خَيْرٌ ۖ وَهُوَ خَيْرُ الرَّازِقِينَ ﴿٧٢﴾

प्रदान गरिएको कुरा नै उत्तम छ र त्यो सबभन्दा राम्रो जीविका प्रदान गर्नेवाला हो ।

وَاِنَّكَ لَتَدۡعُوۡهُمۡ اِلٰى صِرَاطٍ مُّسۡتَقِيۡمٍ ﴿٧٣﴾

७३) र वास्तवमा तपाईले उनीहरूलाई सोभ्रो मार्गमा बोलाइरहनु भएको छ ।

وَاِنَّ الَّذِيۡنَ لَا يُؤۡمِنُوۡنَ بِالۡاٰخِرَةِ عَنِ الصِّرَاطِ لَنٰكِبُوۡنَ ﴿٧٤﴾

७४) निश्चित रूपले जुन मानिसहरू आखिरतमाथि आस्था राख्दैनन् उनीहरू यस मार्गबाट विचलित भई हिड्ने वाला छन् ।

وَلَوۡ رَحِمۡنٰهُمۡ وَكَشَفۡنَا مَا بِهِمۡ مِّنۡ ضُرٍّ لَّلَجُّوۡا فِىۡ طُغۡيَانِهِمۡ يَعۡمَهُوۡنَ ﴿٧٥﴾

७५) र यदि हामीले उनीहरूमाथि दया गर्थ्यौं र उनीहरूको कष्ट हटायौं भने उनीहरू आफ्नो अट्टेरीपनामा अरु बहकी रहने छन् ।

وَلَقَدۡ اَخَذۡنٰهُمۡ بِالۡعَذَابِ فَمَا اسۡتَكَانُوۡا لِرَبِّهِمۡ وَمَا يَتَضَرَّعُوۡنَ ﴿٧٦﴾

७६) यद्यपि हामीले उनीहरूलाई यातनामा समात्यौं तैपनि उनीहरू न आफ्ना पालनकर्ताको अगाडि नतमस्तक भए नत उनीहरू याचना नै गरे ।

حَتّٰٓى اِذَا فَتَحۡنَا عَلَيۡهِمۡ بَابًا ذَا عَذَابٍ شَدِيۡدٍ اِذَا هُمۡ فِيۡهِ مُبۡلِسُوۡنَ ﴿٧٧﴾

७७) यहाँसम्म कि हामीले जब उनीहरूमाथि तीव्र सजायको ढोका खोलिदियौं तब त्यसबेला उनीहरू निराश भइहाले ।

وَهُوَ الَّذِىۡۤ اَنۡشَاَ لَكُمُ السَّمۡعَ وَالۡاَبۡصَارَ وَالۡاَفۡـِٕدَةَ ؕ قَلِيۡلًا مَّا تَشۡكُرُوۡنَ ﴿٧٨﴾

७८) र त्यही अल्लाह हो जसले तिम्रो लागि कान र आँखाहरू तथा हृदयहरू बनाए । तर तिमीले थोरै कृतज्ञता प्रकट गर्दछौ ।

وَهُوَ الَّذِىۡ ذَرَاَكُمۡ فِى الۡاَرۡضِ وَاِلَيۡهِ تُحۡشَرُوۡنَ ﴿٧٩﴾

७९) र उही त हो जसले तिमीलाई सृष्टि गरेर पृथ्वीमा फैलाई दियो र उसैतिर तिमी एकत्रित गरिने छौ ।

| | |
|---|---|
| ८०) र उही हो जसले जीवन प्रदान गर्दछ, र मृत्यु दिन्छ र एकपछि अर्को आउने रात र दिन उसैको अधिकारमा छ, के तिमीले बुझ्दैनौ ? | وَهُوَ الَّذِي يُحْيِي وَيُمِيتُ وَلَهُ اخْتِلَافُ اللَّيْلِ وَالنَّهَارِ ۚ أَفَلَا تَعْقِلُونَ ﴿٨٠﴾ |
| ८१) कुरा यो छ कि जुन कुरा अघिकाले भन्दथे, उस्तै प्रकारको कुरा यिनीहरूले पनि भन्दछन् । | بَلْ قَالُوا مِثْلَ مَا قَالَ الْأَوَّلُونَ ﴿٨١﴾ |
| ८२) (भन्दछन्:) कि जब हामी मरेर माटो र हड्डीहरू भइहाल्नेछौं तै पनि के हामी फेरि उठाइने छौं र ? | قَالُوا أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَبْعُوثُونَ ﴿٨٢﴾ |
| ८३) यो वाचा हामीसित र हामीभन्दा पहिला हाम्रा बाबु बाजेहरूसित पनि हुँदै आएको छ, यो त मात्र अघिका मानिसहरूका कथाहरू हुन् । | لَقَدْ وُعِدْنَا نَحْنُ وَآبَاؤُنَا هَٰذَا مِنْ قَبْلُ إِنْ هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿٨٣﴾ |
| ८४) सोध्नुस् त ज़मीन, र जेजति जमीनमा छन् (सबै) कसका सम्पत्ति हुन् बताऊ यदि थाह छ ? | قُلْ لِمَنِ الْأَرْضُ وَمَنْ فِيهَا إِنْ كُنْتُمْ تَعْلَمُونَ ﴿٨٤﴾ |
| ८५) तुरुन्त जवाफ दिनेछन्: कि अल्लाहको । भन्नुस् त्यसो भए तिमी किन नसीहत मान्दैनौ ? | سَيَقُولُونَ لِلَّهِ ۚ قُلْ أَفَلَا تَذَكَّرُونَ ﴿٨٥﴾ |
| ८६) सोध्नुस् कि: सात आकाशहरूको स्वामी को हो र महान सत्तासनको मालिक को हो ? | قُلْ مَنْ رَبُّ السَّمَاوَاتِ السَّبْعِ وَرَبُّ الْعَرْشِ الْعَظِيمِ ﴿٨٦﴾ |
| ८७) उनीहरूले जवाफ दिनेछन्: कि अल्लाह नै हो, भन्नुस् कि त्यसो भए किन डर मान्दैनौ ? | سَيَقُولُونَ لِلَّهِ ۚ قُلْ أَفَلَا تَتَّقُونَ ﴿٨٧﴾ |
| ८८) सोध्नुस् कि यदि तिमी जान्दछौ भने भनकि त्यो कोहो जसको | قُلْ مَنْ بِيَدِهِ مَلَكُوتُ كُلِّ شَيْءٍ وَهُوَ يُجِيرُ وَلَا يُجَارُ عَلَيْهِ إِنْ كُنْتُمْ تَعْلَمُونَ ﴿٨٨﴾ |

हातमा हरेक कुराको आधिपत्य छ र उसले शरण दिन्छ र उसको दाँजोमा कसैले कसैलाई शरण दिन सक्दैन ।

سَيَقُولُونَ لِلّٰهِ ۚ قُلْ فَاَنّٰى تُسْحَرُوْنَ ﴿٨٩﴾

८९) यही जवाफ दिनेछन्: कि अल्लाह नै हो । भन्नुस्किः त्यसो भए तिमीमाथि जादू कहाँबाट चल्छ ?

بَلْ اَتَيْنٰهُمْ بِالْحَقِّ وَاِنَّهُمْ لَكٰذِبُوْنَ ﴿٩٠﴾

९०) सत्य यो छ कि हामीले उनीहरूको सामु सत्य कुरा पुऱ्याईदिएका छौं र यिनीहरू निःसन्देह भूठा छन् ।

مَا اتَّخَذَ اللّٰهُ مِنْ وَّلَدٍ وَّمَا كَانَ مَعَهٗ مِنْ اِلٰهٍ اِذًا لَّذَهَبَ كُلُّ اِلٰهٍ بِمَا خَلَقَ وَلَعَلَا بَعْضُهُمْ عَلٰى بَعْضٍ ۚ سُبْحٰنَ اللّٰهِ عَمَّا يَصِفُوْنَ ﴿٩١﴾

९१) अल्लाहले नत कसैलाई छोरा बनाएको छ र नत उसको साथमा अरु कोही पूज्य छ, अन्यथा प्रत्येक पूज्यले आफ्नो सृष्टिलाई लिएर अलग अलग हिड्ने थियो, र प्रत्येक एक अर्कामाथि आक्रमण गरिहाल्थ्यो । महान र उच्च छ अल्लाह ती कुराहरूबाट जुन उनीहरूले वर्णन गर्छन ।

عٰلِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٩٢﴾

९२) ऊ लुकेको र प्रकट कुरा जान्दछ र जो उसको साथमा अन्यलाई साझेदार ठहराउँदछन् त्यसभन्दा ऊ उच्च छ ।

قُلْ رَّبِّ اِمَّا تُرِيَنِّيْ مَا يُوْعَدُوْنَ ﴿٩٣﴾

९३) (हे मुहम्मद स. अ. !) तपाईले प्रार्थना गर्नुस् कि हे पालनकर्ता ! जुन (सजाय) को वचन यिनीहरू सित भएको छ, यदि तिमीले मेरो जिन्दगीमा नै उनीहरूमाथि उतारेर देखाउँछौ,

رَّبِّ فَلَا تَجْعَلْنِي فِي الْقَوْمِ الظَّالِمِينَ ﴿٩٤﴾

९४) भने हे पालनकर्ता ! मलाई यी अत्याचारीहरूको समूहमा शम्मिलित नगर्नु ।

وَإِنَّا عَلَىٰ أَن نُّرِيَكَ مَا نَعِدُهُمْ لَقَادِرُونَ ﴿٩٥﴾

९५) निश्चय नै हामी यस कुराको सामर्थ्य राख्दछौं कि हामीले उनीहरूसित जुन वचन गरिराखेका छौं त्यो तपाईलाई देखाइहालौं ।

ادْفَعْ بِالَّتِي هِيَ أَحْسَنُ السَّيِّئَةَ ۚ نَحْنُ أَعْلَمُ بِمَا يَصِفُونَ ﴿٩٦﴾

९६) र नराम्रो कुराको उत्तरमा यस्तो कुरा भन जुनकि धेरै राम्रो होस् यिनीहरूले जेजति वर्णन गर्छन हामीलाई सबै थाहा छ ।

وَقُل رَّبِّ أَعُوذُ بِكَ مِنْ هَمَزَاتِ الشَّيَاطِينِ ﴿٩٧﴾

९७) र भन्नुस् हे पालनकर्ता म शैतानहरूको उकसाहटबाट तिम्रो शरण चाहन्छु ।

وَأَعُوذُ بِكَ رَبِّ أَن يَحْضُرُونِ ﴿٩٨﴾

९८) हे पालनकर्ता ! यसकारण पनि तिम्रो शरण माँगदछु ताकि तिनीहरू मेरो सामु उपस्थित नहोउन् ।

حَتَّىٰ إِذَا جَاءَ أَحَدَهُمُ الْمَوْتُ قَالَ رَبِّ ارْجِعُونِ ﴿٩٩﴾

९९) यहाँसम्म कि जब उनीबाट कसैको मृत्यु नजिक हुन्छ त भन्छन्: मेरो पालनकर्ता मलाई फर्काइ देऊ ।

لَعَلِّي أَعْمَلُ صَالِحًا فِيمَا تَرَكْتُ ۚ كَلَّا ۚ إِنَّهَا كَلِمَةٌ هُوَ قَائِلُهَا ۖ وَمِن وَرَائِهِم بَرْزَخٌ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿١٠٠﴾

१००) ताकि जुन (संसार)लाई म छोडेर आएको छु त्यसमा म राम्रो काम गरूँ, कदापि यस्तो हुने छैन । यो त खाली एउटा कुरा हो जुन उसले भन्नेछ (त्यो पूरा हुने छैन) र उनीहरूको पछाडि एक प्रकारको पर्दा छ, त्यो दिनसम्म जबकि पुन: उठाइनेछन् ।

فَإِذَا نُفِخَ فِي الصُّورِ فَلَا أَنسَابَ بَيْنَهُمْ يَوْمَئِذٍ وَلَا يَتَسَاءَلُونَ ﴿١٠١﴾

१०१) अनि जब सूर फूँकिन्छ, तब त्यहाँ तिनीहरूमा नत रिश्ता, नातेदारी रहनेछ नत एक अर्का बीच सोध पूछ ।

فَمَن ثَقُلَتْ مَوَازِينُهُ فَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿١٠٢﴾

१०२) जसको कर्मको भार गह्रुङ्गो हुनेछ, उनीहरू सफलता प्राप्त गर्ने छन् ।

وَمَنْ خَفَّتْ مَوَازِينُهُ فَأُولَٰئِكَ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ فِي جَهَنَّمَ خَالِدُونَ ﴿١٠٣﴾

१०३) र जसको भार हर्लुङ्गो हुनेछ, उनीहरू त्यस्ता मानिस हुन् जसले आफूलाई हानिमा पारे, सधैंको लागि नर्कमा रहनेछन् ।

تَلْفَحُ وُجُوهَهُمُ النَّارُ وَهُمْ فِيهَا كَالِحُونَ ﴿١٠٤﴾

१०४) आगोले उनीहरूको अनुहारलाई पोली रहने छ, र त्यसमा उनीहरूको अनुहार विकृत भइराखेको हुन्छन् ।

أَلَمْ تَكُنْ آيَاتِي تُتْلَىٰ عَلَيْكُمْ فَكُنتُم بِهَا تُكَذِّبُونَ ﴿١٠٥﴾

१०५) के तिम्रो अगाडी मेरा आयतहरू पढेर सुनाइन्नथे ? र तैपनि तिमीले तिनलाई झूठो मान्थ्यो ।

قَالُوا رَبَّنَا غَلَبَتْ عَلَيْنَا شِقْوَتُنَا وَكُنَّا قَوْمًا ضَالِّينَ ﴿١٠٦﴾

१०६) (तिनीहरू) भन्नेछन्, हे हाम्रा पालनकर्ता । हाम्रो दुर्भाग्य हामी माथि प्रभावित भयो र हामी पथविचलित मानिस थियौं ।

رَبَّنَا أَخْرِجْنَا مِنْهَا فَإِنْ عُدْنَا فَإِنَّا ظَالِمُونَ ﴿١٠٧﴾

१०७) हे हाम्रो पालनकर्ता ! हामीलाई यहाँबाट मुक्ति देऊ अनि यदि तैपनि हामीले पुनः यस्तो गर्छौं भने निश्चय नै हामी अत्याचारी हुनेछौं ।

قَالَ اخْسَئُوا فِيهَا وَلَا تُكَلِّمُونِ ﴿١٠٨﴾

१०८) अल्लाहबाट आदेश हुनेछ, कि यसैमा तिरस्कृत भई बसिराख र मसित कुरा नगर ।

إِنَّهُۥ كَانَ فَرِيقٌ مِّنْ عِبَادِى يَقُولُونَ رَبَّنَآ ءَامَنَّا فَٱغْفِرْ لَنَا وَٱرْحَمْنَا وَأَنتَ خَيْرُ ٱلرَّٰحِمِينَ ﴿١٠٩﴾

१०९) मेरा भक्तहरूमा केही यस्ता मानिसहरू थिए जसले भन्दैथिए: कि हे हाम्रा पालनकर्ता हामीहरूले ईमान ल्याइसकेका छौं तिमीले हामीलाई क्षमा गरिदेऊ, र हामी माथि दया गर र तिमी सबैभन्दा राम्रो दया गर्नेवाला हौ ।

فَٱتَّخَذْتُمُوهُمْ سِخْرِيًّا حَتَّىٰٓ أَنسَوْكُمْ ذِكْرِى وَكُنتُم مِّنْهُمْ تَضْحَكُونَ ﴿١١٠﴾

११०) तर तिमीले उनको उपहास गर्‍यौ, यहाँसम्म कि उनको कारण तिमीले मेरो सम्झना पनि बिर्सिहाल्यौ र तिमीले उनीमाथि हाँस्दै गर्‍यौ ।

إِنِّى جَزَيْتُهُمُ ٱلْيَوْمَ بِمَا صَبَرُوٓا۟ أَنَّهُمْ هُمُ ٱلْفَآئِزُونَ ﴿١١١﴾

१११) आज मैले उनीहरूको धैर्यको प्रतिफल प्रदान गरेकोछु । उनीहरू आफ्नो लक्ष्य प्राप्त गरेका छन् ।

قَٰلَ كَمْ لَبِثْتُمْ فِى ٱلْأَرْضِ عَدَدَ سِنِينَ ﴿١١٢﴾

११२) अल्लाह सोध्नेछ: कि तिमी धर्तीमा कति वर्ष बस्यौ ?

قَالُوا۟ لَبِثْنَا يَوْمًا أَوْ بَعْضَ يَوْمٍ فَسْـَٔلِ ٱلْعَآدِّينَ ﴿١١٣﴾

११३) उनीहरूले भन्नेछन् कि हामी एक दिन वा एकदिन भन्दा पनि कम बस्यौं । गणना गर्ने वालाहरूसित सोधिहाल्नुस् ।

قَٰلَ إِن لَّبِثْتُمْ إِلَّا قَلِيلًا ۖ لَّوْ أَنَّكُمْ كُنتُمْ تَعْلَمُونَ ﴿١١٤﴾

११४) अल्लाहले भन्नेछ: कि (त्यहाँ) तिमी साह्रै नै कम बस्यौं । कति राम्रो हुने थियो यदि तिमीले जानेको भए ।

أَفَحَسِبْتُمْ أَنَّمَا خَلَقْنَٰكُمْ عَبَثًا وَأَنَّكُمْ إِلَيْنَا لَا تُرْجَعُونَ ﴿١١٥﴾

११५) के तिमीले यो ठानेका छौ, कि हामीले तिमीलाई व्यर्थमा सृष्टि गरेका छौं र यो कि तिमीलाई हामीतिर फर्काइनेछैन ?

فَتَعٰلَى اللّٰهُ الْمَلِكُ الْحَقُّ ۚ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ رَبُّ الْعَرْشِ الْكَرِيْمِ ﴿١١٦﴾

११६) अल्लाह, सच्चा सम्राट हो ऊ धेरै उच्च छ । उसबाहेक कोही अन्य सत्य पूज्य छैन, उही स्वामी हो, महिमाशाली सिंहासनको ।

وَمَنْ يَّدْعُ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ ۙ لَا بُرْهَانَ لَهٗ بِهٖ ۙ فَاِنَّمَا حِسَابُهٗ عِنْدَ رَبِّهٖ ۗ اِنَّهٗ لَا يُفْلِحُ الْكٰفِرُوْنَ ﴿١١٧﴾

११७) जोसुकै व्यक्तिले अल्लाहको साथमा कुनै अर्को पूज्यलाई पुकार्दछ, जसको बारेमा उसको साथमा कुनै प्रमाण छैन, त उसको हिसाब उसको पालनकर्तासित छ । निश्चय नै अवज्ञाकारीहरू कहिल्यै सफल हुने छैनन् ।

وَقُلْ رَّبِّ اغْفِرْ وَارْحَمْ وَاَنْتَ خَيْرُ الرّٰحِمِيْنَ ﴿١١٨﴾

११८) र भन्नुस् कि हे मेरो पालनकर्ता ! मलाई क्षमा गरिदिनुस् र दया गर्नुस् तिमी सबैभन्दा राम्रो दया गर्नेवाला हौ ।



# सूरतुन् नूर-२४



सूरतुन् नूर मदनी हो यसमा ६४ आयतहरू र ९ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

१) यो एउटा सूरः हो जसलाई हामीले अवतरित गरेका छौं र यसलाई हामीले अनिवार्य गरेका छौं, र यसमा हामीले स्पष्ट आयतहरू अवतरित गरेका छौं, ताकि तिमीले शिक्षा ग्रहण गर ।

سُورَةٌ أَنزَلْنَاهَا وَفَرَضْنَاهَا وَأَنزَلْنَا فِيهَا آيَاتٍ بَيِّنَاتٍ لَّعَلَّكُمْ تَذَكَّرُونَ ①

२) व्यभिचारिणी र व्यभिचारी, स्त्री, पुरुष यी दुवैलाई सय-सय कोर्रा हान र अल्लाहको धर्मको विषयमा तिमीलाई दया नआओस् यदि तिमी अल्लाह र अन्तिम दिनलाई मान्दछौ, र उनीहरूलाई दण्ड दिने बेलामा मुस्लिमहरूको एक समूह त्यहाँ उपस्थित हुनुपर्छ ।

الزَّانِيَةُ وَالزَّانِي فَاجْلِدُوا كُلَّ وَاحِدٍ مِّنْهُمَا مِائَةَ جَلْدَةٍ ۖ وَلَا تَأْخُذْكُم بِهِمَا رَأْفَةٌ فِي دِينِ اللَّهِ إِن كُنتُمْ تُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ ۖ وَلْيَشْهَدْ عَذَابَهُمَا طَائِفَةٌ مِّنَ الْمُؤْمِنِينَ ②

३) व्यभिचारी मानिस कुनै व्यभिचारिणी वा बहुदेववादी (मुश्रिक) स्त्रीसित नै विवाहको सम्बन्ध जोड्दछ, र यसैप्रकार व्यभिचारिणी स्त्री कुनै व्यभिचारी वा बहुदेववादी पुरुषसंग मात्र आफ्नो विवाहका सम्बन्ध जोड्दछे, र मोमिनहरूका लागि यी दुबै हराम गरी दिइएका छन् ।

الزَّانِي لَا يَنكِحُ إِلَّا زَانِيَةً أَوْ مُشْرِكَةً وَالزَّانِيَةُ لَا يَنكِحُهَا إِلَّا زَانٍ أَوْ مُشْرِكٌ ۚ وَحُرِّمَ ذَٰلِكَ عَلَى الْمُؤْمِنِينَ ③

४) र जुन मानिसहरूले सच्चरित्र र

وَالَّذِينَ يَرْمُونَ الْمُحْصَنَاتِ ثُمَّ لَمْ يَأْتُوا

بِأَرْبَعَةِ شُهَدَآءَ فَٱجْلِدُوهُمْ ثَمَٰنِينَ جَلْدَةً وَلَا تَقْبَلُوا۟ لَهُمْ شَهَٰدَةً أَبَدًا ۚ وَأُو۟لَٰٓئِكَ هُمُ ٱلْفَٰسِقُونَ ④

पवित्र स्त्रीहरू माथि व्यभिचारको दोषारोपण गर्दछन् अनि चारजना साक्षीहरू जुटाउन सक्दैनन् भने उनीहरूलाई अस्सी कोर्रा हान, र उनीहरूलाई साक्षीको रूपमा कहिल्यै स्वीकार नगर, तिनै हुन् जो अवज्ञाकारी छन् ।

إِلَّا ٱلَّذِينَ تَابُوا۟ مِنۢ بَعْدِ ذَٰلِكَ وَأَصْلَحُوا۟ فَإِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌ ⑤

५) तर ती मानिसहरू जसले यस पश्चात तौबा (प्रायश्चित) गर्दछन् र सुधार गर्छन । त अल्लाह धेरै क्षमाशील अत्यन्त दयावान छ ।

وَٱلَّذِينَ يَرْمُونَ أَزْوَٰجَهُمْ وَلَمْ يَكُن لَّهُمْ شُهَدَآءُ إِلَّآ أَنفُسُهُمْ فَشَهَٰدَةُ أَحَدِهِمْ أَرْبَعُ شَهَٰدَٰتٍۭ بِٱللَّهِ ۙ إِنَّهُۥ لَمِنَ ٱلصَّٰدِقِينَ ⑥

६) र जुन मानिसहरू आफ्नो श्रीमतीमाथि व्यभिचारको दोषारोपण गर्दछन् र उनीहरूको सामु स्वयम् उनीहरू बाहेक साक्षीहरू छैनन् भने, उनीहरूमध्येबाट एउटाले (पति) चार पटक अल्लाहको शपथ खाएर यो गवाही देओस् कि त्यो बिल्कुलै सत्य छ ।

وَٱلْخَٰمِسَةُ أَنَّ لَعْنَتَ ٱللَّهِ عَلَيْهِ إِن كَانَ مِنَ ٱلْكَٰذِبِينَ ⑦

७) र पाँचौं पटक गवाही देओस् कि यदि त्यो असत्य भए त्यसमाथि अल्लाहको तिरस्कार होस् ।

وَيَدْرَؤُا۟ عَنْهَا ٱلْعَذَابَ أَن تَشْهَدَ أَرْبَعَ شَهَٰدَٰتٍۭ بِٱللَّهِ ۙ إِنَّهُۥ لَمِنَ ٱلْكَٰذِبِينَ ⑧

८) र पत्नीबाट पनि यो कुराले सजाय हटाउन सकिन्छ, कि त्यसले चार पटक अल्लाहको शपथ खाएर गवाही देओस् उसको पति झूठ बोल्दछ ।

وَٱلْخَٰمِسَةَ أَنَّ غَضَبَ ٱللَّهِ عَلَيْهَآ إِن كَانَ مِنَ ٱلصَّٰدِقِينَ ⑨

९) र पाँचौं पटक यो भनोस्: कि उस माथि (स्त्री माथि) अल्लाहको प्रकोप होस् यदि उसको (पति) सत्य छ भने ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ وَاَنَّ اللّٰهَ تَوَّابٌ حَكِيْمٌ ﴿١٠﴾

१०) यदि तिमीमाथि अल्लाहको कृपा र दया नभएको भए (तिमी संकटमा परिहाल्थ्यौ) र अल्लाह तौबा (प्रयश्चित) स्वीकार गर्नेवाला अत्यन्त सूक्ष्मदर्शी छ ।

اِنَّ الَّذِيْنَ جَآءُوْ بِالْاِفْكِ عُصْبَةٌ مِّنْكُمْ ؕ لَا تَحْسَبُوْهُ شَرًّا لَّكُمْ ؕ بَلْ هُوَ خَيْرٌ لَّكُمْ ؕ لِكُلِّ امْرِئٍ مِّنْهُمْ مَّا اكْتَسَبَ مِنَ الْاِثْمِ ۚ وَالَّذِيْ تَوَلّٰى كِبْرَهٗ مِنْهُمْ لَهٗ عَذَابٌ عَظِيْمٌ ﴿١١﴾

११) जुन मानिसहरूले यो ठूलो लान्छना रचेका छन् उनीहरू पनि तिमी मध्येको एउटा समूह हो । तिमीले त्यसलाई आफ्नो निम्ति नराम्रो नठान, बरु त्यो त तिम्रो निम्ति राम्रै छ, तर तिनीहरूमध्ये प्रत्येकको निम्ति त्यति नै पापको भाग छ जति पाप उसले गरेको छ, र उनीहरूमध्येबाट जुन व्यक्तिले उसको ठूलो भाग आफूले सम्पन्न गरेको छ उसको निम्ति ठूलो सजाय पनि छ ।

لَوْلَآ اِذْ سَمِعْتُمُوْهُ ظَنَّ الْمُؤْمِنُوْنَ وَالْمُؤْمِنٰتُ بِاَنْفُسِهِمْ خَيْرًا ۙ وَّقَالُوْا هٰذَآ اِفْكٌ مُّبِيْنٌ ﴿١٢﴾

१२) यो सुन्ने वित्तिकै मोमिन पुरुष र महिलाले किन आफ्नो हृदयमा राम्रो ठानेनन् र किन भनेनन् कि यो त स्पष्ट रूपले आक्षेप हो ?

لَوْلَا جَآءُوْ عَلَيْهِ بِاَرْبَعَةِ شُهَدَآءَ ۚ فَاِذْ لَمْ يَاْتُوْا بِالشُّهَدَآءِ فَاُولٰٓئِكَ عِنْدَ اللّٰهِ هُمُ الْكٰذِبُوْنَ ﴿١٣﴾

१३) यो असत्य कुरा (रच्ने) मानिसहरू आफ्नो कुराको (वास्तविकताको) निम्ति चार जना साक्षी किन ल्याएनन्, र जब यिनले साक्षी ल्याउन सकेनन् त यी दोषारोपण गर्नेहरू अल्लाहको नजिक झूठा हुन् ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ فِى الدُّنْيَا وَالْاٰخِرَةِ لَمَسَّكُمْ فِيْ مَآ اَفَضْتُمْ فِيْهِ عَذَابٌ عَظِيْمٌ ﴿١٤﴾

१४) यदि दुनियाँ र आखिरतमा तिमीमाथि अल्लाहको कृपा र दया नभएको

भए, निःसन्देह, जुन काममा तिमीहरू लागेका थियौं, त्यसको कारणले तिमी माथि ठूलो सजाय अवतरित हुने थियो ।

१५) जब तिमी एक अर्कासित त्यस (झूठ) लाई आफ्नो मुखले चर्चा परिचर्चा गरी राखेका थियौ र तिमी आफ्नो मुखबाट त्यो सबै कुरा भन्दै गइराखेका थियौ, जसको विषयमा तिमीलाई कुनै ज्ञान थिएन र यद्यपि तिमीले त्यसलाई एउटा साधारण कुरा ठानिराखेका थियौ, तर अल्लाहको निकट, त्यो एउटा गम्भीर कुरो थियो ।

إِذْ تَلَقَّوْنَهُۥ بِأَلْسِنَتِكُمْ وَتَقُولُونَ بِأَفْوَاهِكُم مَّا لَيْسَ لَكُم بِهِۦ عِلْمٌ وَتَحْسَبُونَهُۥ هَيِّنًا وَهُوَ عِندَ ٱللَّهِ عَظِيمٌ ١٥

१६) तिमीले त्यस्तो कुरा सुन्ने वित्तिकै किन भनेनौ कि हामीलाई उचित छैनकि हामी यस्ता कुरा मुखबाट निकालौं । महान र उच्च हौ, तिमी हे अल्लाह ! यो त एउटा ठूलो दोषारोपण हो ?

وَلَوْلَآ إِذْ سَمِعْتُمُوهُ قُلْتُم مَّا يَكُونُ لَنَآ أَن نَّتَكَلَّمَ بِهَٰذَا سُبْحَٰنَكَ هَٰذَا بُهْتَٰنٌ عَظِيمٌ ١٦

१७) अल्लाहले तिमीलाई उपदेश गर्दछ कि पुनः कहिल्यै त्यसो नगर्नु यदि तिमी मोमिन हौ भने ।

يَعِظُكُمُ ٱللَّهُ أَن تَعُودُوا۟ لِمِثْلِهِۦٓ أَبَدًا إِن كُنتُم مُّؤْمِنِينَ ١٧

१८) अल्लाहले आफ्नो आयतहरूलाई तिम्रो सामु स्पष्ट रूपले वर्णन गर्दैछ । र अल्लाह त सर्वज्ञ सूक्ष्मदर्शी छ ।

وَيُبَيِّنُ ٱللَّهُ لَكُمُ ٱلْءَايَٰتِ ۚ وَٱللَّهُ عَلِيمٌ حَكِيمٌ ١٨

१९) जुन मानिसहरूले मुस्लिमहरूमा अश्लीलता (निर्लज्जता) फैलाउन चाहन्छन् उनीहरूको निम्ति दुनियाँ

إِنَّ ٱلَّذِينَ يُحِبُّونَ أَن تَشِيعَ ٱلْفَٰحِشَةُ فِى ٱلَّذِينَ ءَامَنُوا۟ لَهُمْ عَذَابٌ أَلِيمٌ فِى ٱلدُّنْيَا وَٱلْءَاخِرَةِ ۚ وَٱللَّهُ يَعْلَمُ وَأَنتُمْ لَا تَعْلَمُونَ ١٩

र आखिरतमा (लोक-परलोक) दुखद् यातना छ । र अल्लाह सबै जान्दछ र तिमी केही जान्दैनौ ।

وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ وَاَنَّ اللّٰهَ رَءُوْفٌ رَّحِيْمٌ ﴿٢٠﴾

२०) यदि तिमी माथि अल्लाहको अनुग्रह र उसको दया नभएको भए र यो, कि अल्लाह बडो करुणामय अत्यन्त दयावान छ । (अनि तिमी माथि यातना अवतरित हुने थियो) ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَتَّبِعُوْا خُطُوٰتِ الشَّيْطٰنِ ۗ وَمَنْ يَّتَّبِعْ خُطُوٰتِ الشَّيْطٰنِ فَاِنَّهٗ يَاْمُرُ بِالْفَحْشَآءِ وَالْمُنْكَرِ ۗ وَلَوْلَا فَضْلُ اللّٰهِ عَلَيْكُمْ وَرَحْمَتُهٗ مَا زَكٰى مِنْكُمْ مِّنْ اَحَدٍ اَبَدًا ۙ وَّلٰكِنَّ اللّٰهَ يُزَكِّيْ مَنْ يَّشَآءُ ۗ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٢١﴾

२१) मोमिनहरू ! शैतानका पाइलाहरूमा (बाटोमा) नहिड्नु र जुन व्यक्ति शैतानको पाइला अनुशरण गर्दछ भने उसले त निर्लज्जताका कुराहरू र नराम्रा कामहरू नै बताउनेछ । र यदि तिमीमाथि अल्लाहको अनुग्रह र उसको दया नभएको भए तिमी मध्ये कसैले पनि पवित्रतालाई प्राप्त गर्न सक्दैनथ्यो, तर अल्लाह जसलाई पवित्र गर्न चाहन्छ गरिदिन्छ र अल्लाह सुन्नेवाला र जान्नेवाला छ ।

وَلَا يَاْتَلِ اُولُوا الْفَضْلِ مِنْكُمْ وَالسَّعَةِ اَنْ يُّؤْتُوْۤا اُولِي الْقُرْبٰى وَالْمَسٰكِيْنَ وَالْمُهٰجِرِيْنَ فِيْ سَبِيْلِ اللّٰهِ ۖ وَلْيَعْفُوْا وَلْيَصْفَحُوْا ۗ اَلَا تُحِبُّوْنَ اَنْ يَّغْفِرَ اللّٰهُ لَكُمْ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٢﴾

२२) तिमी मध्ये जो गुणी र समाार्थ्यवान छन् उनीहरूलाई आफ्ना नातेदार, निमुखा, गरीब र अल्लाहको मार्गमा घरबार छाड्नेहरूलाई सहयोग दिनबाट पन्छिने काम गर्नु हुँदैन, बरु उनीहरूलाई आवश्यक छ कि क्षमा गरिदेउन् र उनीहरूको त्रुटिको वास्ता नगरुन । के तिमी यो चाहदैनौं कि अल्लाहले तिमीलाई क्षमा गरोस् ? अल्लाह गल्तीहरूलाई माफी दिने अत्यन्त दयावान छ ?

| | |
|---|---|
| २३) जुन मानिसहरूले सच्चरित्रवान पवित्र, सोभ्की, निर्दोष र ईमानवाली स्त्रीहरूमाथि लान्छना लगाउँछन्, उनीहरूमाथि दुनियाँ र आखिरतमा तिरस्कार छ । र उनीहरूको निम्ति एउटा ठूलो यातना छ । | إِنَّ الَّذِينَ يَرْمُونَ الْمُحْصَنَٰتِ الْغَٰفِلَٰتِ الْمُؤْمِنَٰتِ لُعِنُوا فِي الدُّنْيَا وَالْآخِرَةِ وَلَهُمْ عَذَابٌ عَظِيمٌ ﴿٢٣﴾ |
| २४) (कियामतको दिन) उनीहरूका जिब्रो, हात र खुट्टा सबै उनीहरूका कर्महरूको गवाही दिनेछन् । | يَوْمَ تَشْهَدُ عَلَيْهِمْ أَلْسِنَتُهُمْ وَأَيْدِيهِمْ وَأَرْجُلُهُم بِمَا كَانُوا يَعْمَلُونَ ﴿٢٤﴾ |
| २५) त्यस दिन अल्लाहले उनीहरूलाई (कर्मको) पूरा पूरा न्यायपूर्ण प्रतिफल दिने छ र उनीहरूलाई थाहा भई हाल्ने छ कि अल्लाह नै सत्य हो र (सत्यलाई) उही प्रकट गर्नेवाला हो । | يَوْمَئِذٍ يُوَفِّيهِمُ اللَّهُ دِينَهُمُ الْحَقَّ وَيَعْلَمُونَ أَنَّ اللَّهَ هُوَ الْحَقُّ الْمُبِينُ ﴿٢٥﴾ |
| २६) अपवित्र स्वास्नी मानिसहरू अपवित्र लोग्ने मानिसहरूका लागि हुन्, र अपवित्र लोग्ने मानिसहरू अपवित्र स्वास्नी मानिसहरूको निम्ति छन् र पवित्र स्वास्नी मान्छेहरू पवित्र लोग्ने मानिसहरूका लागि हुन् र पवित्र लोग्ने मानिसहरू पवित्र स्वास्नी मानिसहरूका निम्ति हुन् । यस्ता पवित्र मानिसहरूको सम्बन्धमा जुन बकवासहरू (मिथ्या दोषारोपण) गर्दैछन् । उनी यसबाट बिल्कुलै मुक्त छन् । उनको लागि क्षमा र सम्मानित आजीविका छ । | الْخَبِيثَٰتُ لِلْخَبِيثِينَ وَالْخَبِيثُونَ لِلْخَبِيثَٰتِ وَالطَّيِّبَٰتُ لِلطَّيِّبِينَ وَالطَّيِّبُونَ لِلطَّيِّبَٰتِ أُولَٰئِكَ مُبَرَّءُونَ مِمَّا يَقُولُونَ لَهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٢٦﴾ |
| २७) हे मोमिनहरू ! आफ्ना घरहरू | يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا تَدْخُلُوا بُيُوتًا غَيْرَ بُيُوتِكُمْ |

حَتّٰى تَسْتَاْنِسُوْا وَتُسَلِّمُوْا عَلٰٓى اَهْلِهَا ۭ ذٰلِكُمْ خَيْرٌ لَّكُمْ لَعَلَّكُمْ تَذَكَّرُوْنَ ﴿٢٧﴾

बाहेक अरुको घरमा प्रवेश न गर जबसम्म कि अनुमति प्राप्त गर्दैनौ, र त्यसमा बस्नेहरूलाई सलाम गर्ने गर । यही नै तिम्रो निम्ति उत्तम छ, यसकारण कि तिमीले ध्यान राख ।

فَاِنْ لَّمْ تَجِدُوْا فِيْهَآ اَحَدًا فَلَا تَدْخُلُوْهَا حَتّٰى يُؤْذَنَ لَكُمْ ۚ وَاِنْ قِيْلَ لَكُمُ ارْجِعُوْا فَارْجِعُوْا هُوَ اَزْكٰى لَكُمْ ۭ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ عَلِيْمٌ ﴿٢٨﴾

२८) यदि तिमीले घरमा कसैलाई उपस्थित पाउदैनौ भने जबसम्म तिमीलाई अनुमति दिइन्न, त्यसमा प्रवेश नगर, र यदि यो भनिन्छ कि फर्किहाल भने तिमी फर्किहाल, यही तिम्रो निम्ति राम्रो कुरा हो । जुन काम तिमीले गर्दछौ अल्लाह त्यो सबै जान्दछ ।

لَيْسَ عَلَيْكُمْ جُنَاحٌ اَنْ تَدْخُلُوْا بُيُوْتًا غَيْرَ مَسْكُوْنَةٍ فِيْهَا مَتَاعٌ لَّكُمْ ۭ وَاللّٰهُ يَعْلَمُ مَا تُبْدُوْنَ وَمَا تَكْتُمُوْنَ ﴿٢٩﴾

२९) (हो) यदि तिमी कुनै यस्तो घरमा जान्छौ जसमा कोही पनि बस्दैन र त्यसमा तिम्रो सामान राखिएको वा तिमीलाई फाइदा हुन्छ भने तिमीलाई (त्यहाँ जानमा) कुनै पाप छैन । जेजति तिमीले प्रकट गर्दछौ र जे लुकाउँछौ, अल्लाहलाई सबै थाहा छ ।

قُلْ لِّلْمُؤْمِنِيْنَ يَغُضُّوْا مِنْ اَبْصَارِهِمْ وَيَحْفَظُوْا فُرُوْجَهُمْ ۭ ذٰلِكَ اَزْكٰى لَهُمْ ۭ اِنَّ اللّٰهَ خَبِيْرٌۢ بِمَا يَصْنَعُوْنَ ﴿٣٠﴾

३०) मोमिन पुरुषहरूसित भनिदिनुस् कि आफ्नो दृष्टि तल राख्ने गरुन् र गोप्याङ्गहरूको रक्षा गरुन्, यो उनीहरूको निम्ति बडो पवित्रताको कुरो हो । मानिसहरू जुन काम गर्छन, अल्लाहलाई त्यो सबै थाहा छ ।

३१) र मोमिन स्त्रीहरूसित भनिदिनुस् कि उनीहरूले पनि आफ्ना दृष्टिहरू तल राख्ने गरुन् र आफ्नो पवित्रताको रक्षा गरुन् आफ्ना श्रृंगार प्रकट नगरुन्, त्यसबाहेक जुन खुला रहन्छ र आफ्ना वक्षस्थललाई दुपट्टाहरूले छोपी राखुन् र आफ्नो श्रृंगार कसैलाई प्रकट नगरुन्, आफ्ना पतिहरू वा आफ्ना बुबा वा आफ्नो पतिको बुबा वा आफ्ना छोरा वा आफ्ना पतिको छोरा वा आफ्ना खासै भाइहरू वा भतिजाहरू वा आफ्ना भानिजहरू वा आफ्नो मेलजोलका स्त्रीहरू वा जो लौंडीहरू र उनीहरूको अधिनस्त यस्ता पुरुषहरू जसमा स्त्रीको आवश्यकता हुँदैन, वा ती बच्चाहरू जो कि स्त्रीहरूको कुरोसित परिचित हुँदैनन् तिनीहरू बाहेक । र आफ्ना खुट्टाहरू भूईंमा बजारेर नहिड्नु कि उनीहरूको लुकेको श्रृंगार थाहा भइहालोस् । र मोमिनहरू हो ! तिमी सबै अल्लाहको अगाडि प्रयश्चित गर ताकि तिमी मुक्ति पाउन सक ।

وَقُلْ لِّلْمُؤْمِنٰتِ يَغْضُضْنَ مِنْ اَبْصَارِهِنَّ وَيَحْفَظْنَ فُرُوْجَهُنَّ وَلَا يُبْدِيْنَ زِيْنَتَهُنَّ اِلَّا مَا ظَهَرَ مِنْهَا وَلْيَضْرِبْنَ بِخُمُرِهِنَّ عَلٰى جُيُوْبِهِنَّ وَلَا يُبْدِيْنَ زِيْنَتَهُنَّ اِلَّا لِبُعُوْلَتِهِنَّ اَوْ اٰبَآئِهِنَّ اَوْ اٰبَآءِ بُعُوْلَتِهِنَّ اَوْ اَبْنَآئِهِنَّ اَوْ اَبْنَآءِ بُعُوْلَتِهِنَّ اَوْ اِخْوَانِهِنَّ اَوْ بَنِيْٓ اِخْوَانِهِنَّ اَوْ بَنِيْٓ اَخَوٰتِهِنَّ اَوْ نِسَآئِهِنَّ اَوْ مَا مَلَكَتْ اَيْمَانُهُنَّ اَوِ التّٰبِعِيْنَ غَيْرِ اُولِي الْاِرْبَةِ مِنَ الرِّجَالِ اَوِ الطِّفْلِ الَّذِيْنَ لَمْ يَظْهَرُوْا عَلٰى عَوْرٰتِ النِّسَآءِ ۖ وَلَا يَضْرِبْنَ بِاَرْجُلِهِنَّ لِيُعْلَمَ مَا يُخْفِيْنَ مِنْ زِيْنَتِهِنَّ ۗ وَتُوْبُوْٓا اِلَى اللّٰهِ جَمِيْعًا اَيُّهَ الْمُؤْمِنُوْنَ لَعَلَّكُمْ تُفْلِحُوْنَ ﴿٣١﴾

३२) र तिमीहरू मध्ये जो स्त्री, पुरुष अविवाहित छन् उनको विवाह गरिदिने गर, र आफ्ना गुलाम र दासीहरूको पनि जो नेक छन् (निकाह गरिदेने गर) र उनीहरू यदि गरीब छन् भने अल्लाहले

وَاَنْكِحُوا الْاَيَامٰى مِنْكُمْ وَالصّٰلِحِيْنَ مِنْ عِبَادِكُمْ وَاِمَآئِكُمْ ۗ اِنْ يَّكُوْنُوْا فُقَرَآءَ يُغْنِهِمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۗ وَاللّٰهُ وَاسِعٌ عَلِيْمٌ ﴿٣٢﴾

उनीहरूलाई आफ्नो अनुग्रहले समृद्ध गरिदिनेछ, र अल्लाह धेरै सुविधा दाता सर्वज्ञ छ ।

३३) र जसले विवाहको अवसर पाइराखेका छैनन् उनीहरूले सच्चरित्र रहनु आवश्यक छ । यहाँसम्म कि अल्लाहले आफ्नो अनुग्रहबाट उनीहरूलाई समृद्ध गरिहालोस् । र तिम्रो दासहरू मध्ये जसले तिमीलाई केही दिएर स्वतन्त्र भएको लिखत गराउन चाहन्छ, भने तिमी उनीहरूलाई भद्र र नेक पाउँछौ भने उनीहरूसित मुकातबत् (मालिक र दासबीच स्वतन्त्रता सम्बन्धी सम्झौता) गरिहाल र अल्लाहले जुन सम्पति तिमीलाई प्रदान गरेको छ त्यसमध्येबाट उनीहरूलाई पनि देऊ र आफ्नो दासीहरूलाई यदि उनीहरू पवित्र रहन चाहन्छन्, भने सांसारिक जीवनको फाइदा प्राप्त गर्नको निम्ति उनीहरूलाई व्यभिचारको लागि बाध्य नगर्नु । र जसले उनलाई बाध्य गर्ने छ। त निश्चय नै उनीहरूलाई बाध्य गरिए पश्चात अल्लाहले उनीहरूको यस गल्तीको लागि क्षमा प्रदान गर्ने वाला छ ।

وَلْيَسْتَعْفِفِ الَّذِيْنَ لَا يَجِدُوْنَ نِكَاحًا حَتّٰى
يُغْنِيَهُمُ اللّٰهُ مِنْ فَضْلِهٖ ۗ وَالَّذِيْنَ يَبْتَغُوْنَ الْكِتٰبَ
مِمَّا مَلَكَتْ اَيْمَانُكُمْ فَكَاتِبُوْهُمْ اِنْ عَلِمْتُمْ فِيْهِمْ
خَيْرًا ۖ وَّاٰتُوْهُمْ مِّنْ مَّالِ اللّٰهِ الَّذِيْٓ اٰتٰىكُمْ ۗ وَلَا
تُكْرِهُوْا فَتَيٰتِكُمْ عَلَى الْبِغَاۤءِ اِنْ اَرَدْنَ تَحَصُّنًا لِّتَبْتَغُوْا
عَرَضَ الْحَيٰوةِ الدُّنْيَا ۗ وَمَنْ يُّكْرِهْهُّنَّ فَاِنَّ اللّٰهَ
مِنْ بَعْدِ اِكْرَاهِهِنَّ غَفُوْرٌ رَّحِيْمٌ ﴿٣٣﴾

३४) हामीले तिमीतिर स्पष्ट आयतहरू उतारेका छौं, र जुन मानिसहरू तिमीभन्दा अगाडि गुज्रिसकेका छन्,

وَلَقَدْ اَنْزَلْنَآ اِلَيْكُمْ اٰيٰتٍ مُّبَيِّنٰتٍ وَّمَثَلًا مِّنَ
الَّذِيْنَ خَلَوْا مِنْ قَبْلِكُمْ وَمَوْعِظَةً لِّلْمُتَّقِيْنَ ﴿٣٤﴾

उनीहरूका दृष्टान्त र संयमीहरूको निम्ति नसिहत (चेतावनी) ।

٣٥ اَللّٰهُ نُوْرُ السَّمٰوٰتِ وَالْاَرْضِ ۭ مَثَلُ نُوْرِهٖ كَمِشْكٰوةٍ فِيْهَا مِصْبَاحٌ ۭ اَلْمِصْبَاحُ فِيْ زُجَاجَةٍ ۭ اَلزُّجَاجَةُ كَاَنَّهَا كَوْكَبٌ دُرِّيٌّ يُّوْقَدُ مِنْ شَجَرَةٍ مُّبٰرَكَةٍ زَيْتُوْنَةٍ لَّا شَرْقِيَّةٍ وَّلَا غَرْبِيَّةٍ ۙ يَّكَادُ زَيْتُهَا يُضِيْۗءُ وَلَوْ لَمْ تَمْسَسْهُ نَارٌ ۭ نُوْرٌ عَلٰي نُوْرٍ ۭ يَهْدِي اللّٰهُ لِنُوْرِهٖ مَنْ يَّشَاۗءُ ۭ وَيَضْرِبُ اللّٰهُ الْاَمْثَالَ لِلنَّاسِ ۭ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ

३५) अल्लाह आकाशहरू, र धरतीहरूको प्रकाश हो । उसको प्रकाशको उदाहरण यस्तो छ कि एउटा खोपा छ, जसमा टुक्की छ र टुक्की एउटा शीशाको बट्टामा छ, र शीशा यस्तो सफा सुग्घर छ कि चम्किराखेको तारा जस्तै होस् । त्यो दियो जो पवित्र जैतूनको रुखको तेलबाट बालिन्छ, जुन रुख न पूर्वतिर छ न पश्चिमतिर छ । (यस्तो प्रतीत हुन्छ कि) त्यसको तेल चाहे आगोले त्यसलाई नछोएपनि, बल्नलाई तयार छ । प्रकाशमाथि प्रकाश छ । अल्लाहले आफ्नो प्रकाशतर्फ जसलाई चाहन्छ सोझो बाटो देखाउँछ । र अल्लाह मानिसहरूको लागि उदाहरणहरू वर्णन गर्दछ । र अल्लाह प्रत्येक कुरोको अवस्था जान्दछ ।

٣٦ فِيْ بُيُوْتٍ اَذِنَ اللّٰهُ اَنْ تُرْفَعَ وَيُذْكَرَ فِيْهَا اسْمُهٗ ۙ يُسَبِّحُ لَهٗ فِيْهَا بِالْغُدُوِّ وَالْاٰصَالِ

३६) ती घरहरूमा जसलाई उच्च बनाउन र (त्यहाँ) आफ्नो स्तुति गर्न अल्लाहको हुकुम भएको छ त्यहाँ बिहान र साँझ उसको गुणगान (सुब्हानल्लाह) गरिरहन्छन् ।

٣٧ رِجَالٌ ۙ لَّا تُلْهِيْهِمْ تِجَارَةٌ وَّلَا بَيْعٌ عَنْ ذِكْرِ اللّٰهِ وَاِقَامِ الصَّلٰوةِ وَاِيْتَاۗءِ الزَّكٰوةِ ۭ يَخَافُوْنَ يَوْمًا تَتَقَلَّبُ فِيْهِ الْقُلُوْبُ وَالْاَبْصَارُ

३७) यस्ता मानिसहरू जसलाई अल्लाहको स्मरणबाट, नमाज़ पढ्न र ज़कात दिनबाट नत व्यापारले अल्छी बनाउँछ र नत क्रय-विक्रयले, उनीहरू त्यस

दिन सित डर्छन्, जुन दिन अनेक हृदय र आँखाहरू उलट-पलट भइहाल्नेछन् ।

لِيَجْزِيَهُمُ اللَّهُ أَحْسَنَ مَا عَمِلُوا وَيَزِيدَهُم مِّن فَضْلِهِ ۗ وَاللَّهُ يَرْزُقُ مَن يَشَاءُ بِغَيْرِ حِسَابٍ ﴿٣٨﴾

३८) यस इच्छाले कि अल्लाहले उनीहरूलाई उनीहरूको कर्महरूको धेरै राम्रो फल देओस् र आफ्नो कृपाले केही बढी पनि प्रदान गरोस् र अल्लाहले जसलाई चाहन्छ त्यसलाई असीमित जीविका प्रदान गर्दछ ।

وَالَّذِينَ كَفَرُوا أَعْمَالُهُمْ كَسَرَابٍ بِقِيعَةٍ يَحْسَبُهُ الظَّمْآنُ مَاءً حَتَّىٰ إِذَا جَاءَهُ لَمْ يَجِدْهُ شَيْئًا وَوَجَدَ اللَّهَ عِندَهُ فَوَفَّاهُ حِسَابَهُ ۗ وَاللَّهُ سَرِيعُ الْحِسَابِ ﴿٣٩﴾

३९) र जुन मानिसहरूले कुफ्र गरे, उनीहरूका कर्महरूको उदाहरण यस्तो छ जस्तै निर्जन मैदानमा बालुवाको कण, कि तिर्खाएकोले पानी सम्भोस् । यहाँसम्म कि जब उसको सामु आउँछ, त त्यसले केही पनि पाउँदैन र अल्लाहलाई नै आफ्नो निकट देख्दछ जसले उसलाई उसको हिसाब पूरा चुक्ता गरिदिन्छ । र अल्लाह शीघ्र हिसाब गर्नेवाला हो,

أَوْ كَظُلُمَاتٍ فِي بَحْرٍ لُّجِّيٍّ يَغْشَاهُ مَوْجٌ مِّن فَوْقِهِ مَوْجٌ مِّن فَوْقِهِ سَحَابٌ ۚ ظُلُمَاتٌ بَعْضُهَا فَوْقَ بَعْضٍ إِذَا أَخْرَجَ يَدَهُ لَمْ يَكَدْ يَرَاهَا ۗ وَمَن لَّمْ يَجْعَلِ اللَّهُ لَهُ نُورًا فَمَا لَهُ مِن نُّورٍ ﴿٤٠﴾

४०) वा ती गहिरो समुन्द्री अँध्यारो जस्तो छ जसमाथि तरङ्गहरूले छोपिराखेका छन् उसको माथि बादलले ढाकी राखेको छ, अर्थात अँध्यारो नै अँध्यारो छ एउटा माथि अर्को । जब आफ्नो हात निकालोस् त केही देख्न नसकोस् । र (कुरो यो छ कि) जसलाई अल्लाहले नै प्रकाश

दिंदैन उसलाई कतैबाट पनि प्रकाश प्राप्त हुन सक्दैन ।

४१) के तिमीले देखेनौ, कि आकाश र पृथ्वीका सबै प्राणी र पखेटा फिंजाएर उड्ने सबै पंछी पनि अल्लाहको स्तुतिमा व्यस्त छन् सबैको नमाज र स्तुति उसलाई थाहा छ । र मानिसहरू जे गर्दछन् सबै अल्लाहलाई थाहा छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يُسَبِّحُ لَهُ مَن فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَالطَّيْرُ صَافَّاتٍ ۖ كُلٌّ قَدْ عَلِمَ صَلَاتَهُ وَتَسْبِيحَهُ ۗ وَاللَّهُ عَلِيمٌ بِمَا يَفْعَلُونَ ﴿٤١﴾

४२) र आकाश र पृथ्वीको सत्ता अल्लाहकै हो र अल्लाहतिरै फर्केर जानुपर्नेछ ।

وَلِلَّهِ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ وَإِلَى اللَّهِ الْمَصِيرُ ﴿٤٢﴾

४३) के तपाईले देख्नु भएन कि अल्लाह बादलहरूलाई चलाउँछ । फेरि उनीहरूलाई परस्पर मिलाउँछ र फेरि त्यसलाई पत्रपत्रमा पारिदन्छ, फेरि तपाई देख्नुहुन्छ कि बादलबाट पानी निस्कि वृष्टि भइराखेको छ, र आकाश तिरबाट असिनाका पहाडबाट उसैले असिनाहरू खसाल्छ, अनि जसमाथि चाहन्छ, त्यसमाथि खसाल्छ र जसबाट चाहन्छ त्यसलाई हटाइदिन्छ । बादलबाटै निस्कने चट्याङ्गको चमक यस्तो हुन्छ कि आँखाको ज्योति नै खोसिदिनेछ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يُزْجِي سَحَابًا ثُمَّ يُؤَلِّفُ بَيْنَهُ ثُمَّ يَجْعَلُهُ رُكَامًا فَتَرَى الْوَدْقَ يَخْرُجُ مِنْ خِلَالِهِ وَيُنَزِّلُ مِنَ السَّمَاءِ مِن جِبَالٍ فِيهَا مِن بَرَدٍ فَيُصِيبُ بِهِ مَن يَشَاءُ وَيَصْرِفُهُ عَن مَّن يَشَاءُ ۖ يَكَادُ سَنَا بَرْقِهِ يَذْهَبُ بِالْأَبْصَارِ ﴿٤٣﴾

४४) अल्लाहले नै राती र दिनलाई फेर्दछ । निश्चय नै देख्ने आँखाहरूका निम्ति यसमा ठूलो शिक्षा छ ।

يُقَلِّبُ اللَّهُ اللَّيْلَ وَالنَّهَارَ ۚ إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِّأُولِي الْأَبْصَارِ ﴿٤٤﴾

४५) अल्लाहले हरेक जीवधारीलाई पानीबाट सृष्टि गरेको छ, तिनीहरू मध्ये कुनै

وَاللَّهُ خَلَقَ كُلَّ دَابَّةٍ مِّن مَّاءٍ ۖ فَمِنْهُم مَّن يَمْشِي عَلَىٰ بَطْنِهِ وَمِنْهُم مَّن يَمْشِي عَلَىٰ رِجْلَيْنِ وَمِنْهُم مَّن يَمْشِي

عَلٰٓى اَرْبَعٍ ۭ يَخْلُقُ اللّٰهُ مَا يَشَاۗءُ ۭ اِنَّ اللّٰهَ عَلٰي كُلِّ شَيْءٍ قَدِيْرٌ ۝

यस्ता छन् जुनकि घिस्रिएर हिंड्छन् र कुनै दुईखुट्टा टेकि हिड्छन्, कुनै उनीहरू मध्ये चारखुट्टा टेकि हिड्छन्, अल्लाहले जे चाहन्छ सृष्टि गर्दछ । निःसन्देह अल्लाह हरचीजमाथि सामर्थ्यवान छ ।

لَقَدْ اَنْزَلْنَآ اٰيٰتٍ مُّبَيِّنٰتٍ ۭ وَاللّٰهُ يَهْدِيْ مَنْ يَّشَاۗءُ اِلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ۝

४६) कुनै संदेह र शंका बेगैर हामीले नै स्पष्ट आयतहरू अवतरित गरेका हौं र अल्लाहले जसलाई चाहन्छ सोझो बाटोतिर मार्गदर्शन गर्दछ ।

وَيَقُوْلُوْنَ اٰمَنَّا بِاللّٰهِ وَبِالرَّسُوْلِ وَاَطَعْنَا ثُمَّ يَتَوَلّٰى فَرِيْقٌ مِّنْهُمْ مِّنْۢ بَعْدِ ذٰلِكَ ۭ وَمَآ اُولٰۗىِٕكَ بِالْمُؤْمِنِيْنَ ۝

४७) र (केही) भन्छन् कि हामीले अल्लाह र रसूलमाथि ईमान ल्यायौं र आज्ञाकारी भयौं फेरि त्यस पश्चात उनीहरूमध्ये एउटा समूह विमुख भइहाल्छ । यी मानिसहरू ईमानवाला हुँदै हैनन् ।

وَاِذَا دُعُوْٓا اِلَى اللّٰهِ وَرَسُوْلِهٖ لِيَحْكُمَ بَيْنَهُمْ اِذَا فَرِيْقٌ مِّنْهُمْ مُّعْرِضُوْنَ ۝

४८) र जब उनीहरूलाई यस विषयका लागि बोलाइन्छ, कि अल्लाहका रसूलले उनीहरूको बीचको विवादमा फैसला गरी देऊन् तब उनीहरूमध्ये एउटा समूह विमुख भइहाल्छ ।

وَاِنْ يَّكُنْ لَّهُمُ الْحَقُّ يَاْتُوْٓا اِلَيْهِ مُذْعِنِيْنَ ۝

४९) किन्तु यदि उनीहरूलाई कुनै लाभ प्राप्त हुनेवाला छ भने त्यसतर्फ बड़ो आज्ञाकारी भएर आइहाल्छन् ।

اَفِيْ قُلُوْبِهِمْ مَّرَضٌ اَمِ ارْتَابُوْٓا اَمْ يَخَافُوْنَ اَنْ يَّحِيْفَ اللّٰهُ عَلَيْهِمْ وَرَسُوْلُهٗ ۭ بَلْ اُولٰۗىِٕكَ هُمُ الظّٰلِمُوْنَ ۝

५०) के उनीहरूको हृदयमा रोग छ ? वा यिनीहरू शंका र सन्देहमा छन् ? वा उनलाई यस कुराको भय छ कि उनीहरूमाथि अल्लाह र उसको रसूलले अन्याय गर्नेछन् ? (होइन),

बरु यिनीहरू स्वयम् ठूलो अत्याचारी हुन् ।

५१) मोमिनको कुरा त यो हुन्छ कि जब तिनलाई अल्लाह र उसको रसुलतिर बोलाइन्छ, कि अल्लाह र उसको रसूलले उनीहरूको बीचमा फैसला गरिदिउन् त भन्छन्: कि हामीले (आदेश) सुनिहाल्यौं र मानिहाल्यौं, र यिनै मानिसहरू सफलता प्राप्त गर्नेवाला हुन् ।

إِنَّمَا كَانَ قَوْلَ الْمُؤْمِنِينَ إِذَا دُعُوا إِلَى اللَّهِ وَرَسُولِهِ لِيَحْكُمَ بَيْنَهُمْ أَنْ يَقُولُوا سَمِعْنَا وَأَطَعْنَا ۚ وَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿٥١﴾

५२) र जुन व्यक्तिले अल्लाह र उसका रसुलको आज्ञा पालन गर्ने छ र अल्लाहसित डर मान्ने छ तिनैले मुक्ति प्राप्त गर्नेवाला हुन् ।

وَمَنْ يُطِعِ اللَّهَ وَرَسُولَهُ وَيَخْشَ اللَّهَ وَيَتَّقْهِ فَأُولَٰئِكَ هُمُ الْفَائِزُونَ ﴿٥٢﴾

५३) बडो दृढतापूर्वक अल्लाहको शपथ लिएर भन्दछन कि तपाईको आदेश हुने वित्तिकै (सबै घरहरूबाट) निस्किहाल्छन्, भनिदिनुस् कि शपथ नखाऊ । तिम्रो आज्ञा पालनको (वास्तविकता) थाहा छ । जे तिमी गर्दछौ अल्लाह तिम्रा सबै कुराबाट अवगत छ ।

وَأَقْسَمُوا بِاللَّهِ جَهْدَ أَيْمَانِهِمْ لَئِنْ أَمَرْتَهُمْ لَيَخْرُجُنَّ ۖ قُلْ لَا تُقْسِمُوا ۖ طَاعَةٌ مَعْرُوفَةٌ ۚ إِنَّ اللَّهَ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿٥٣﴾

५४) भनिदिनुस् की: अल्लाहको आज्ञा पालना गर र रसूलको आदेशको अनुशरण गर । यदि तिमी विमुख हुन्छौ भने रसूलको जिम्मामा त्यति मात्र छ जति उहाँलाई भनिएको छ । र तिमी माथि त्यसको जवाफदेही छ जुन तिम्रो जिम्मा छ । र यदि

قُلْ أَطِيعُوا اللَّهَ وَأَطِيعُوا الرَّسُولَ ۖ فَإِنْ تَوَلَّوْا فَإِنَّمَا عَلَيْهِ مَا حُمِّلَ وَعَلَيْكُمْ مَا حُمِّلْتُمْ ۖ وَإِنْ تُطِيعُوهُ تَهْتَدُوا ۚ وَمَا عَلَى الرَّسُولِ إِلَّا الْبَلَاغُ الْمُبِينُ ﴿٥٤﴾

रसूलको आदेश अनुसार हिंड्ने छौ भने सिधा मार्ग प्राप्त हुनेछ । र रसूलको जिम्मामा त स्पष्ट रूपले (आदेशलाई) पुऱ्याइदिने सम्म मात्र हो ।

५५) अल्लाहले तिमीहरू मध्ये ती मानिसहरूसित, जसले ईमान ल्याए र असल कर्म गरे, वचन दिएको छः कि उसले उनीहरूलाई धर्तीमा अवश्य नै सत्ताधिकार प्रदान गर्नेछ, जसरी उसले उनीहरू भन्दा अगाडिका मानिसहरूलाई सत्ताधिकार प्रदान गरेको थियो र उनीहरूको धर्मलाई जुन उनीहरूको निम्ति रुचाएको छ त्यसलाई दृढ र बलियो बनाउनेछ, र निश्चय नै उनीहरूको वर्तमान भयको बदलामा उसले उनीहरूलाई शान्ति प्रदान गराउनेछ । उनीहरूले मेरो अराधना गर्नेछन्, (र) मेरो साथमा कसैको साझेदारी ठहराउँने छैनन् र जसले यस पश्चात पनि कृतघ्नता र कुफ्र गर्दछन् तिनी निश्चित रूपले अवज्ञाकारी हुन् ।

وَعَدَ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا مِنْكُمْ وَعَمِلُوا الصّٰلِحٰتِ لَيَسْتَخْلِفَنَّهُمْ فِي الْاَرْضِ كَمَا اسْتَخْلَفَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ وَلَيُمَكِّنَنَّ لَهُمْ دِيْنَهُمُ الَّذِي ارْتَضٰى لَهُمْ وَلَيُبَدِّلَنَّهُمْ مِّنْ بَعْدِ خَوْفِهِمْ اَمْنًا يَعْبُدُوْنَنِيْ لَا يُشْرِكُوْنَ بِيْ شَيْـًٔا وَمَنْ كَفَرَ بَعْدَ ذٰلِكَ فَاُولٰٓئِكَ هُمُ الْفٰسِقُوْنَ ﴿٥٥﴾

५६) र नमाज़ पढी राख र ज़कात दिइराख र अल्लाहका पैग़म्बरको आदेश अनुसार हिंड्ने गर ताकि तिमीमाथि कृपा गरियोस् ।

وَاَقِيْمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَاَطِيْعُوا الرَّسُوْلَ لَعَلَّكُمْ تُرْحَمُوْنَ ﴿٥٦﴾

५७) काफिरहरू यस्तो कहिले नठानुन् कि उनीहरू हामीलाई जमीनमा हराउने छन् । (नियन्त्रित गर्नेछन्)

لَا تَحْسَبَنَّ الَّذِيْنَ كَفَرُوْا مُعْجِزِيْنَ فِي الْاَرْضِ وَمَاْوٰىهُمُ النَّارُ وَلَبِئْسَ الْمَصِيْرُ ﴿٥٧﴾

यिनीहरूको बासस्थान त नर्क नै हो र त्यो साह्रै नराम्रो बासस्थान हो ।

يَاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لِيَسْتَاْذِنْكُمُ الَّذِيْنَ مَلَكَتْ اَيْمَانُكُمْ وَالَّذِيْنَ لَمْ يَبْلُغُوا الْحُلُمَ مِنْكُمْ ثَلٰثَ مَرّٰتٍ ؕ مِنْ قَبْلِ صَلٰوةِ الْفَجْرِ وَحِيْنَ تَضَعُوْنَ ثِيَابَكُمْ مِّنَ الظَّهِيْرَةِ وَمِنْۢ بَعْدِ صَلٰوةِ الْعِشَآءِ ؕ ثَلٰثُ عَوْرٰتٍ لَّكُمْ ؕ لَيْسَ عَلَيْكُمْ وَلَا عَلَيْهِمْ جُنَاحٌۢ بَعْدَهُنَّ ؕ طَوّٰفُوْنَ عَلَيْكُمْ بَعْضُكُمْ عَلٰى بَعْضٍ ؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ ؕ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿٥٨﴾

५८) हे मोमिनहरू ! तिमी मध्येका तिम्रा दास, दासीहरू र नाबालकहरूका लागि आवश्यक छ कि तीन समयहरूमा तिमीसित अनुमति लिइहालुन् प्रभातकालिन नमाज फज्र भन्दा अगाडि, र जब दिउँसो तिमीले आरामको निम्ति आफ्ना लुगाहरू फुकाई दिन्छौ, र (तेस्रो) इशाको नमाज पश्चात । (यी) तीन समय तिम्रो एकान्त र पर्दाका हुन् । यी समय बाहेक (अन्य समयहरूमा) न तिमी माथि कुनै दोष छ र न उनीहरू माथि । जुन कि (कामको लागि) एक अर्काको पासमा आइरहन्छौ । यसप्रकार अल्लाहले आफ्नो आयतहरूलाई स्पष्टरूपले वर्णन गर्दछ र अल्लाह राम्ररी जान्नेवाला, सूक्ष्मदर्शी छ ।

وَاِذَا بَلَغَ الْاَطْفَالُ مِنْكُمُ الْحُلُمَ فَلْيَسْتَاْذِنُوْا كَمَا اسْتَاْذَنَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ ؕ كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمْ اٰيٰتِهٖ ؕ وَاللّٰهُ عَلِيْمٌ حَكِيْمٌ ﴿٥٩﴾

५९) र जब तिम्रो बच्चाहरू युवावस्था प्राप्त गर्दछन् तब उनीहरूलाई आवश्यक छ कि अनुमति लिएर (तिम्रो कोठामा) प्रवेश गर्ने गरुन् जुनप्रकारले उनीहरू भन्दा अगाडिका मानिसहरूले अनुमति लिंदै गरेका थिए । यसप्रकार अल्लाहले तिम्रो निम्ति आफ्ना आयतहरू स्पष्ट पार्दछ । अल्लाह राम्ररी जान्नेवाला, सूक्ष्मदर्शी छ ।

وَالْقَوَاعِدُ مِنَ النِّسَآءِ الّٰتِيْ لَا يَرْجُوْنَ نِكَاحًا
فَلَيْسَ عَلَيْهِنَّ جُنَاحٌ اَنْ يَّضَعْنَ ثِيَابَهُنَّ
غَيْرَ مُتَبَرِّجٰتٍۢ بِزِيْنَةٍ ؕ وَاَنْ يَّسْتَعْفِفْنَ
خَيْرٌ لَّهُنَّ ؕ وَاللّٰهُ سَمِيْعٌ عَلِيْمٌ ﴿٦٠﴾

६०) र ठूलो उमेरकी स्त्रीहरू जसलाई विवाहको आशा र इच्छा छैन, र उनीहरूले लुगा फुकाएर (टाउको खुला) गर्ने गर्दछिन् भने उनीहरू माथि कुनै दोष छैन, तर यस शर्तमा कि उनीहरूले आफ्नो श्रृंगारको प्रदर्शन गर्ने होइनन् । तैपनि यदि यसबाट पनि सावधानी राख्छिन भने (यो) उनीहरूको निम्ति राम्रो हुन्छ र अल्लाह राम्ररी सुन्दछ, जान्दछ ।

لَيْسَ عَلَى الْاَعْمٰى حَرَجٌ وَّلَا عَلَى الْاَعْرَجِ
حَرَجٌ وَّلَا عَلَى الْمَرِيْضِ حَرَجٌ وَّلَا عَلٰٓى
اَنْفُسِكُمْ اَنْ تَاْكُلُوْا مِنْۢ بُيُوْتِكُمْ اَوْ
بُيُوْتِ اٰبَآئِكُمْ اَوْ بُيُوْتِ اُمَّهٰتِكُمْ اَوْ بُيُوْتِ
اِخْوَانِكُمْ اَوْ بُيُوْتِ اَخَوٰتِكُمْ اَوْ بُيُوْتِ
اَعْمَامِكُمْ اَوْ بُيُوْتِ عَمّٰتِكُمْ اَوْ بُيُوْتِ
اَخْوَالِكُمْ اَوْ بُيُوْتِ خٰلٰتِكُمْ اَوْ مَا مَلَكْتُمْ
مَّفَاتِحَهٗٓ اَوْ صَدِيْقِكُمْ ؕ لَيْسَ عَلَيْكُمْ
جُنَاحٌ اَنْ تَاْكُلُوْا جَمِيْعًا اَوْ اَشْتَاتًا ؕ فَاِذَا
دَخَلْتُمْ بُيُوْتًا فَسَلِّمُوْا عَلٰٓى اَنْفُسِكُمْ
تَحِيَّةً مِّنْ عِنْدِ اللّٰهِ مُبٰرَكَةً طَيِّبَةً ؕ
كَذٰلِكَ يُبَيِّنُ اللّٰهُ لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ
تَعْقِلُوْنَ ﴿٦١﴾

६१) अन्धाको लागि, लङ्गडोको लागि र रोगीको लागि र तिम्रो आफैको निम्ति कुनै दोष छैन कि आफ्ना घरहरूबाट खान्छौ वा आफ्नो पिताहरूका घरहरूबाट वा आफ्ना आमाका घरबाट वा आफना दाइभाइहरूका घरहरूबाट वा आफ्ना दिदी बहिनीहरूका घरहरूबाट वा आफ्ना काकाहरूका घरहरूबाट वा आफ्ना फुफूहरूका घरबाट वा आफ्ना मामाहरूका घरहरूबाट वा आफ्ना (खालाहरू) आमाका दिदी बहिनीहरूका घरहरूबाट वा जसको साँचोहरूको तिमी स्वामी भएका छौ वा आफ्ना मित्रहरू कहाँ । यस कुरामा तिमीलाई कुनै दोष छैन, कि तिमी मिलीजुली खान्छौ, अथवा अलग-अलग । र जब तिमी घरहरूमा प्रवेश गर्दछौ, तब आफ्ना घरवालाहरूलाई सलाम

गर्ने गर । (यो) अल्लाहको तर्फबाट प्रदान अत्यन्त फाइदावाला पवित्र उपहार हो । यसप्रकार स्पष्ट रूपले आफ्ना पवित्र वाणीलाई अल्लाहले वर्णन गर्दछ ताकि तिमी बुद्धिले काम लेऊ ।

إِنَّمَا الْمُؤْمِنُونَ الَّذِينَ آمَنُوا بِاللَّهِ وَرَسُولِهِ
وَإِذَا كَانُوا مَعَهُ عَلَىٰ أَمْرٍ جَامِعٍ لَّمْ يَذْهَبُوا
حَتَّىٰ يَسْتَأْذِنُوهُ ۚ إِنَّ الَّذِينَ يَسْتَأْذِنُونَكَ
أُولَٰئِكَ الَّذِينَ يُؤْمِنُونَ بِاللَّهِ وَرَسُولِهِ ۚ فَإِذَا
اسْتَأْذَنُوكَ لِبَعْضِ شَأْنِهِمْ فَأْذَن لِّمَن شِئْتَ
مِنْهُمْ وَاسْتَغْفِرْ لَهُمُ اللَّهَ ۚ إِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿٦٢﴾

६२) मोमिन त ती नै हुन् जसले अल्लाह र उसको रसूलमा पूर्ण विश्वास गर्दछन् । र जब कुनै सामूहिक विषयको लागि एकत्रित हुन्छन्, तब उनीसित अनुमति न लिइकन कहिंपनि गइहाल्दैनन् । हे पैगम्बर ! जुन मानिसहरू तिमीसित अनुमति प्राप्त गर्दछन् ती नै अल्लाह र त्यसको रसूलमा विश्वास गर्नेहरू हुन्छन् । तसर्थ जब यिनीहरू तिमीसित कुनै कामका लागि अनुमति चाहन्छन्, त्यस वखत तिनीहरू मध्ये जसलाई चाहन्छौ, अनुमति दिने गर र उनीहरूका लागि अल्लाहसँग क्षमाको प्रार्थना गर्ने गर । निःसन्देह अल्लाह बडो क्षमाशील, अत्यन्त दयावान छ ।

لَّا تَجْعَلُوا دُعَاءَ الرَّسُولِ بَيْنَكُمْ كَدُعَاءِ بَعْضِكُم
بَعْضًا ۚ قَدْ يَعْلَمُ اللَّهُ الَّذِينَ يَتَسَلَّلُونَ مِنكُمْ
لِوَاذًا ۚ فَلْيَحْذَرِ الَّذِينَ يُخَالِفُونَ عَنْ أَمْرِهِ أَن
تُصِيبَهُمْ فِتْنَةٌ أَوْ يُصِيبَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٦٣﴾

६३) मोमिनहरू ! तिमीहरूले अल्लाहको रसूलले बोलाएकोलाई तिमी आपसमा एक अर्कालाई बोलाए जस्तो न ठान । निःसन्देह अल्लाहलाई ती मानिसहरूबारे थाहा छ, जो तिमीहरूमध्ये आँखा छलेर बेवास्ता गरी गोप्य रूपले हिंडी हाल्छन्, हेर

जसले उनको आदेशको अवहेलना गर्दछन्, उनीहरूलाई तर्सनु पर्छ कि कहीं यस्तो न होस्, कि उनीहरू माथि कुनै ठूलो विपत्ति आई परोस् अथवा उनीहरू माथि कुनै दुःखद् यातना आई लागोस् ।

६४) (हेर) ! सावधान रहनु जे जति आकाशहरू र पृथ्वीमा छ, सबै अल्लाह कै हो । जुन (अवस्थामा) तिमी छौ, त्यो उसलाई राम्ररी थाहा छ र जुन दिन मानिसहरू उसतिर फर्काइने छन्, त उनीहरूले जेजति गर्दछन् त्यसबारे उसले उनीहरूलाई अवगत गराउने छ र अल्लाह प्रत्येक कुरा जान्दछ ।

اَلَآ اِنَّ لِلّٰهِ مَا فِی السَّمٰوٰتِ وَالْاَرْضِ ؕ قَدْ یَعْلَمُ مَآ اَنْتُمْ عَلَیْهِ ؕ وَیَوْمَ یُرْجَعُوْنَ اِلَیْهِ فَیُنَبِّئُهُمْ بِمَا عَمِلُوْا ؕ وَاللّٰهُ بِكُلِّ شَیْءٍ عَلِیْمٌ ﴿٦٤﴾



# सूरतुल् फुरक़ान-२५




सूरतुल् फुरक़ान मक्की हो र यसमा ७७ आयतहरू र ६ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

تَبٰرَكَ الَّذِيْ نَزَّلَ الْفُرْقَانَ عَلٰى عَبْدِهٖ لِيَكُوْنَ لِلْعٰلَمِيْنَ نَذِيْرًا ۙ﴿١﴾

१) बडो बरकतवाला छ त्यो अल्लाह जसले यो "फुरक़ान" आफ्नो भक्त माथि अवतरित गऱ्यो, ताकि संसारका मानिसहरूलाई डराउन सकोस् ।

الَّذِيْ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ وَلَمْ يَتَّخِذْ وَلَدًا وَّلَمْ يَكُنْ لَّهٗ شَرِيْكٌ فِى الْمُلْكِ وَخَلَقَ كُلَّ شَيْءٍ فَقَدَّرَهٗ تَقْدِيْرًا ﴿٢﴾

२) उही अल्लाहको सत्ता छ आकाशहरू र धर्तीमा र उसको न कुनै सन्तान छ र नत सत्तामा उसको कोही साझेदार छ । त्यसले प्रत्येक वस्तुलाई सृष्टि गऱ्यो, र त्यसलाई ठीक क्रममा व्यवस्थित गऱ्यो ।

وَاتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اٰلِهَةً لَّا يَخْلُقُوْنَ شَيْـًٔا وَّهُمْ يُخْلَقُوْنَ وَلَا يَمْلِكُوْنَ لِاَنْفُسِهِمْ ضَرًّا وَّلَا نَفْعًا وَّلَا يَمْلِكُوْنَ مَوْتًا وَّلَا حَيٰوةً وَّلَا نُشُوْرًا ﴿٣﴾

३) तिनीहरूले अल्लाह बाहेक अरुलाई पूज्य बनाएका छन्, जसले कुनै कुराको सृष्टि गर्दैनन्, बरु तिनीहरू स्वयम् सृष्टि गरिएका छन् ! उनीहरूलाई नत आफ्नो हानिको अधिकार प्राप्त छ नत लाभको । र उनीहरूलाई नत मृत्युको अधिकार प्राप्त छ नत जीवनको। र नत पुनः जीवित भई उठ्ने कुराको ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْٓا اِنْ هٰذَآ اِلَّآ اِفْكُ ِۨافْتَرٰىهُ وَاَعَانَهٗ عَلَيْهِ قَوْمٌ اٰخَرُوْنَ ۛ فَقَدْ جَآءُوْ ظُلْمًا وَّزُوْرًا ۛ﴿٤﴾

४) र काफिरहरूले भन्दछन्: कि यो (कुरआन) त उनैले बनाएको मनगढन्त कुरा हो, र अन्य मानिसहरूले यस

काममा उसको सहायता गरेका हुन् । यी मानिसहरू वास्तवमा ठूलो अत्याचार र झूठको धरातलमा झरी सकेका छन् ।

وَقَالُوٓا أَسَاطِيرُ الْأَوَّلِينَ اكْتَتَبَهَا فَهِيَ تُمْلَىٰ عَلَيْهِ بُكْرَةً وَأَصِيلًا ﴿٥﴾

५) र यो पनि भन्दछन्: कि यो त अघिका मानिसहरूका कथाहरू हुन, जसलाई उसले लेखाई राखेको छ बस उही बिहान साँझ उनीहरू अगाडी पढेर सुनाइन्छ ।

قُلْ أَنزَلَهُ الَّذِي يَعْلَمُ السِّرَّ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ إِنَّهُ كَانَ غَفُورًا رَّحِيمًا ﴿٦﴾

६) भनिदिनुस् त्यसलाई त उसले अवतरित गरेको छ । जो आकाशहरू र धर्तीमा लुकेका सबै कुरा जान्दछ । निःसन्देह ऊ बडो, क्षमाशिल, अत्यन्त दयावान छ ।

وَقَالُوا مَالِ هَٰذَا الرَّسُولِ يَأْكُلُ الطَّعَامَ وَيَمْشِي فِي الْأَسْوَاقِ ۙ لَوْلَا أُنزِلَ إِلَيْهِ مَلَكٌ فَيَكُونَ مَعَهُ نَذِيرًا ﴿٧﴾

७) र उनीहरू भन्दछन्: कि यो कस्तो पैगम्बर हो जसले कि खाना खान्छ र बजारहरूमा हिड्डुल गर्दछ । यसको नजिक (हिदायतको निम्ति) कुनै स्वर्गदूत किन पठाइदैन कि ऊ पनि यसको साथ लागेर डराउने वाला बन्थ्यो ।

أَوْ يُلْقَىٰ إِلَيْهِ كَنزٌ أَوْ تَكُونُ لَهُ جَنَّةٌ يَأْكُلُ مِنْهَا ۚ وَقَالَ الظَّالِمُونَ إِن تَتَّبِعُونَ إِلَّا رَجُلًا مَّسْحُورًا ﴿٨﴾

८) वा यसतिर कुनै खजाना पठाइन्थ्यो वा यसको कुनै बगैचा हुन्थ्यो जसबाट खान्थ्यो, र ती अत्याचारिहरूले भन्दछन्: कि तिमी त यस्तो व्यक्तिको पछाडि हिँडिराखेका छौ जो जादूबाट प्रभावित छ ।

انظُرْ كَيْفَ ضَرَبُوا لَكَ الْأَمْثَالَ فَضَلُّوا فَلَا يَسْتَطِيعُونَ سَبِيلًا ﴿٩﴾

९) हेर्नुस् त ! यिनीहरूले तपाईको बारेमा कस्ता कस्ता कुरा गर्दछन् ।

तसर्थ त्यसबाट यिनीहरू आफै पथ-विचलित भइरहेका छन् र कुनै हालतमा सही मार्ग प्राप्त गर्न सक्तैनन् ।

تَبَارَكَ الَّذِيٓ إِن شَآءَ جَعَلَ لَكَ خَيۡرًا مِّن
ذَٰلِكَ جَنَّٰتٍ تَجۡرِي مِن تَحۡتِهَا ٱلۡأَنۡهَٰرُ
وَيَجۡعَل لَّكَ قُصُورًا ١٠

१०) अल्लाह धेरै बरकतावाला छ, जसले यदि चाहेको भए तपाईलाई यिनीहरूले भनेको भन्दा राम्रा बगैचाहरू प्रदान गर्दथ्यो जस मुनि नहरहरू बगिराखेका हुन्छन् र तपाईको निम्ति महल पनि बनाई दिने थियो ।

بَلۡ كَذَّبُواْ بِٱلسَّاعَةِۖ وَأَعۡتَدۡنَا لِمَن كَذَّبَ
بِٱلسَّاعَةِ سَعِيرًا ١١

११) कुरो यो छ कि यिनीहरूले त कियामतलाई नै झूठा भनी राखेका छन् । र हामीले कियामतलाई झूठा भन्नेहरूको निम्ति नर्कमा आगो तयार राखेका छौं ।

إِذَا رَأَتۡهُم مِّن مَّكَانِۭ بَعِيدٖ سَمِعُواْ لَهَا تَغَيُّظٗا
وَزَفِيرٗا ١٢

१२) जब त्यसले (नर्क) उनीहरूलाई टाढाबाट देख्नेछ, तब यिनीहरूले उसको भयङ्कर रिसको चित्कार सुन्ने छन् ।

وَإِذَآ أُلۡقُواْ مِنۡهَا مَكَانٗا ضَيِّقٗا مُّقَرَّنِينَ دَعَوۡاْ
هُنَالِكَ ثُبُورٗا ١٣

१३) र जब यिनीहरू नर्कको कुनै साङ्गुरो ठाउँमा ज़ंजीरमा हात पछाडि बाँधिएर फालिनेछन् तब (यिनीहरूले) त्यहाँ आफ्ना लागि मृत्युलाई पुकारने छन् ।

لَّا تَدۡعُواْ ٱلۡيَوۡمَ ثُبُورٗا وَٰحِدٗا وَٱدۡعُواْ ثُبُورٗا
كَثِيرٗا ١٤

१४) (उनी सित भनिनेछ) आज एउटा मृत्युलाई मात्र न पुकार, धेरै मृत्युहरूलाई पुकार ।

قُلْ أَذَٰلِكَ خَيْرٌ أَمْ جَنَّةُ الْخُلْدِ الَّتِي وُعِدَ الْمُتَّقُونَ ۚ كَانَتْ لَهُمْ جَزَاءً وَمَصِيرًا ﴿١٥﴾

१५) तपाई भनिदिनुस् ! कि के यो उत्तम हो वा त्यो सधैंको जन्नत (स्वर्ग), जसको आत्मसंयमिहरूसित वाचा गरिएको छ । जो उनीहरूको (कर्मको) प्रतिफल हो र उनीहरूले बस्ने स्थान हुनेछ ।

لَهُمْ فِيهَا مَا يَشَاءُونَ خَالِدِينَ ۚ كَانَ عَلَىٰ رَبِّكَ وَعْدًا مَسْئُولًا ﴿١٦﴾

१६) (त्यहाँ) तिनीहरू जे चाहन्छन्, उनीहरूको निम्ति त्यो उपलब्ध हुने छ, सधैं त्यसमा बास गर्ने छन् । यो तिम्रो पालनकर्ताको जिम्मा यस्तो वचन हो जुन प्रार्थनीय छ ।

وَيَوْمَ يَحْشُرُهُمْ وَمَا يَعْبُدُونَ مِنْ دُونِ اللَّهِ فَيَقُولُ أَأَنْتُمْ أَضْلَلْتُمْ عِبَادِي هَٰؤُلَاءِ أَمْ هُمْ ضَلُّوا السَّبِيلَ ﴿١٧﴾

१७) र जुन दिन अल्लाहले यिनीहरूलाई र अल्लाह बाहेक यिनीहरूले जसको पूजा गर्दछन्, एकत्रित गरेर सोध्नेछ, कि के तिमीले मेरा यी सृष्टिहरूलाई विचलित गरेका थियौ वा यिनीहरू स्वयम् मार्ग विचलित भएका थिए ?

قَالُوا سُبْحَانَكَ مَا كَانَ يَنْبَغِي لَنَا أَنْ نَتَّخِذَ مِنْ دُونِكَ مِنْ أَوْلِيَاءَ وَلَٰكِنْ مَتَّعْتَهُمْ وَآبَاءَهُمْ حَتَّىٰ نَسُوا الذِّكْرَ وَكَانُوا قَوْمًا بُورًا ﴿١٨﴾

१८) उनीहरूले जवाफ दिनेछन्: कि पवित्र छौ तिमी, हामीलाई यो कुरा उचित थिएन कि तिमीलाई छाडी अरु कसैलाई पक्षधर (स्रष्टा) बनाऔं, कुरो यो छ कि तिमीले नै उनीहरूलाई र उनीहरूका बाबु बाजेलाई अत्यधिक सुख सामाग्री प्रदान गर्‍यौ यहाँसम्म कि उनीहरूले तिम्रो नसीहतलाई बिर्सिदिए र यिनीहरू नष्ट हुनेहरू नै थिए ।

فَقَدْ كَذَّبُوكُم بِمَا تَقُولُونَ فَمَا تَسْتَطِيعُونَ صَرْفًا وَلَا نَصْرًا ۚ وَمَن يَظْلِم مِّنكُمْ نُذِقْهُ عَذَابًا كَبِيرًا ﴿١٩﴾

१९) (काफिरहरू !) उनीहरूले त तिमीलाई तिम्रो सबै कुरामा झुठ्लाएका थिए । अब न तिमीमा यातनामा परिवर्तन गर्ने शक्ति छ र न कुनै सहायता नै पाउन सक्तछौ । र तिमीहरू मध्ये जस-जसले पनि अत्याचार गरेका छन् तिनलाई हामीले ठूलो यातनाको स्वाद चखाउँनेछौं ।

وَمَا أَرْسَلْنَا قَبْلَكَ مِنَ الْمُرْسَلِينَ إِلَّا إِنَّهُمْ لَيَأْكُلُونَ الطَّعَامَ وَيَمْشُونَ فِي الْأَسْوَاقِ ۗ وَجَعَلْنَا بَعْضَكُمْ لِبَعْضٍ فِتْنَةً أَتَصْبِرُونَ ۗ وَكَانَ رَبُّكَ بَصِيرًا ﴿٢٠﴾

२०) हामीले तपाईभन्दा पहिला, जति पैगम्बरहरू पठाएका छौं, सबै खाना खानथे र बजारहरूमा हिंड्डुल गर्दथे र हामीले तिमीहरू मध्ये हरेकलाई एक अर्काको निम्ति परीक्षाको माध्यम बनायौं । के तिमीले धैर्य गर्दछौ ? तिम्रो पालनकर्ताले सबै (कुरा) देख्दछ ।

وَقَالَ الَّذِينَ لَا يَرْجُونَ لِقَاءَنَا لَوْلَا أُنزِلَ عَلَيْنَا الْمَلَائِكَةُ أَوْ نَرَىٰ رَبَّنَا ۗ لَقَدِ اسْتَكْبَرُوا فِي أَنفُسِهِمْ وَعَتَوْ عُتُوًّا كَبِيرًا ﴿٢١﴾

२१) र जुन मानिसहरूले हामीसित भेट्ने आशा राख्दैनन्, भन्दछन् कि हाम्रा निम्ति फरिश्ताहरू (स्वर्गदूत) किन उतारिएनन्? वा हामी आफ्नो पालनकर्तालाई (किन) आफ्नो आँखाले देख्दैनौं ? यिनीहरूले आफैलाई ठूलो अहंकारी सम्झेका छन् र ठूलो विद्रोह गरिराखेका छन् ।

يَوْمَ يَرَوْنَ الْمَلَائِكَةَ لَا بُشْرَىٰ يَوْمَئِذٍ لِّلْمُجْرِمِينَ وَيَقُولُونَ حِجْرًا مَّحْجُورًا ﴿٢٢﴾

२२) जुन दिन तिनीहरू फरिश्ताहरूलाई देख्नेछन् त्यो दिन अपराधीहरूको निम्ति कुनै खुशीको कुरा हुने छैन र उनीहरू पुकार्ने छन् हामी बंचित नै वंचित भएका छौं ।

وَقَدِمْنَآ إِلَىٰ مَا عَمِلُوا۟ مِنْ عَمَلٍ فَجَعَلْنَٰهُ هَبَآءً مَّنثُورًا ﴿٢٣﴾

२३) र उनीहरूले जे-जे कर्म गरेका थिए त्यसतर्फ ध्यानाकर्षण भएमा हामीले तिनलाई व्यर्थ बनाइदिनेछौं ।

أَصْحَٰبُ ٱلْجَنَّةِ يَوْمَئِذٍ خَيْرٌ مُّسْتَقَرًّا وَأَحْسَنُ مَقِيلًا ﴿٢٤﴾

२४) हो त्यस दिन जन्नतमा बस्नेहरूको बासस्थान राम्रो हुनेछ र आरामगर्ने ठाउँ पनि राम्रो हुनेछ ।

وَيَوْمَ تَشَقَّقُ ٱلسَّمَآءُ بِٱلْغَمَٰمِ وَنُزِّلَ ٱلْمَلَٰٓئِكَةُ تَنزِيلًا ﴿٢٥﴾

२५) र जुन दिन आकाश बादलको साथ फाट्ने (च्यात्ने) छ र फरिश्ताहरू निरन्तर अवतरित गराइने छन् ।

ٱلْمُلْكُ يَوْمَئِذٍ ٱلْحَقُّ لِلرَّحْمَٰنِ ۚ وَكَانَ يَوْمًا عَلَى ٱلْكَٰفِرِينَ عَسِيرًا ﴿٢٦﴾

२६) त्यस दिन वास्तविक राज्य अल्लाहको हुनेछ । र इन्कार गर्नेहरूलाई त्यो दिन धेरै कठिन हुनेछ ।

وَيَوْمَ يَعَضُّ ٱلظَّالِمُ عَلَىٰ يَدَيْهِ يَقُولُ يَٰلَيْتَنِى ٱتَّخَذْتُ مَعَ ٱلرَّسُولِ سَبِيلًا ﴿٢٧﴾

२७) त्यस दिन अत्याचारीले आफ्नो हात टोक्नेछ र भन्नेछः कि म रसूलको मार्गमा हिंडेको भए कति राम्रो हुने थियो ।

يَٰوَيْلَتَىٰ لَيْتَنِى لَمْ أَتَّخِذْ فُلَانًا خَلِيلًا ﴿٢٨﴾

२८) अफशोच ! मैले अमुक व्यक्तिलाई मित्र नबनाएको भए राम्रो हुने थियो ।

لَّقَدْ أَضَلَّنِى عَنِ ٱلذِّكْرِ بَعْدَ إِذْ جَآءَنِى ۗ وَكَانَ ٱلشَّيْطَٰنُ لِلْإِنسَٰنِ خَذُولًا ﴿٢٩﴾

२९) त्यसले त मलाई त्यसपछि विचलित पारी दियो जबकि निर्देशन मेरो पासमा आइसकेको थियो । र शैतानले त समय आएपछि मनुष्यलाई धोखा दिने नै हो ।

وَقَالَ ٱلرَّسُولُ يَٰرَبِّ إِنَّ قَوْمِى ٱتَّخَذُوا۟ هَٰذَا ٱلْقُرْءَانَ مَهْجُورًا ﴿٣٠﴾

३०) र पैगम्बरले भन्ने छ कि हे मेरो पालनकर्ता निःसन्देह मेरो जातिबन्धुले यस कुरआनलाई त्यागिराखेका थिए ।

३१) र यसैप्रकार हामीले प्रत्येक नबी (संदेष्टा) को निम्ति अपराधीहरू मध्येबाट शत्रु बनायौं । र मार्गदर्शन तथा सहायताको निम्ति त तिम्रो पालनहार नै पर्याप्त छ ।

وَكَذَٰلِكَ جَعَلْنَا لِكُلِّ نَبِيٍّ عَدُوًّا مِّنَ الْمُجْرِمِينَ ۗ وَكَفَىٰ بِرَبِّكَ هَادِيًا وَنَصِيرًا ﴿٣١﴾

३२) र जुन मानिसहरूले इन्कार गरे, उनीहरूको भनाई छ, कि उसमाथि सम्पूर्ण कुरआन एकैपटक किन अवतरित गरिएन ? यसकारण हामीले (अलि-अलि उतार्‍यौं) ताकि यस द्वारा तिम्रो हृदयलाई दृढ राखौं र हामीले यसलाई रुकी-रुकी नै पढेर सुनाएका हौं ।

وَقَالَ الَّذِينَ كَفَرُوا لَوْلَا نُزِّلَ عَلَيْهِ الْقُرْآنُ جُمْلَةً وَاحِدَةً ۚ كَذَٰلِكَ لِنُثَبِّتَ بِهِ فُؤَادَكَ ۖ وَرَتَّلْنَاهُ تَرْتِيلًا ﴿٣٢﴾

३३) र यिनीहरूले तपाईं सामु जुन उदाहरण ल्याउँने छन्, हामीले त्यसको सही र धेरै राम्रो जवाफ तपाईलाई बताई दिनेछौं ।

وَلَا يَأْتُونَكَ بِمَثَلٍ إِلَّا جِئْنَاكَ بِالْحَقِّ وَأَحْسَنَ تَفْسِيرًا ﴿٣٣﴾

३४) जुन मानिसहरू घोप्टो पारी नर्कतिर एकत्रित गरिनेछन्, उनीहरू नराम्रो बासस्थानवाला र पूरै विचलित बाटोवाला हुने छन् ।

الَّذِينَ يُحْشَرُونَ عَلَىٰ وُجُوهِهِمْ إِلَىٰ جَهَنَّمَ أُولَٰئِكَ شَرٌّ مَّكَانًا وَأَضَلُّ سَبِيلًا ﴿٣٤﴾

३५) र निःसन्देह हामीले मूसा (अलै) लाई किताब प्रदान गर्‍यौं र उनका सहयात्री भाइ हारूनलाई (वज़ीर) सहायकको रूपमा बनायौं ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ وَجَعَلْنَا مَعَهُ أَخَاهُ هَارُونَ وَزِيرًا ﴿٣٥﴾

३६) र भन्यौं: कि तिमी दुवै ती मानिसहरूतिर जाऊ, जसले हाम्रो आयतहरूलाई असत्य भनी रहेका

فَقُلْنَا اذْهَبَا إِلَى الْقَوْمِ الَّذِينَ كَذَّبُوا بِآيَاتِنَا فَدَمَّرْنَاهُمْ تَدْمِيرًا ﴿٣٦﴾

छन् । फेरि हामीले उनीहरूलाई पूरै नष्ट गरिहाल्यौं ।

وَقَوْمَ نُوحٍ لَّمَّا كَذَّبُوا الرُّسُلَ أَغْرَقْنَاهُمْ وَجَعَلْنَاهُمْ لِلنَّاسِ آيَةً ۖ وَأَعْتَدْنَا لِلظَّالِمِينَ عَذَابًا أَلِيمًا ﴿٣٧﴾

३७) र "नूहको" जाति बन्धुले पनि जब पैगम्बरहरूलाई झूठा भने, तब हामीले उनलाई डुबाइदियौं र उनीहरूलाइ मानिसहरूको निम्ति शिक्षा लिने निशानी बनाइदियौं र अत्याचारीहरूको निम्ति हामीले दुःखद् यातना तयार गरिसकेका छौं ।

وَعَادًا وَثَمُودَا۟ وَأَصْحَابَ الرَّسِّ وَقُرُونًا بَيْنَ ذَٰلِكَ كَثِيرًا ﴿٣٨﴾

३८) र "आद" र "समूद" का जातिबन्धुहरू र इनारवालाहरू र उनीहरूको बीचमा भएका धेरै समूहहरूलाई पनि नष्टगरिहाल्यौं ।

وَكُلًّا ضَرَبْنَا لَهُ الْأَمْثَالَ ۖ وَكُلًّا تَبَّرْنَا تَتْبِيرًا ﴿٣٩﴾

३९) र सबैलाई (सम्झाउनको) निम्ति हामीले उदाहरण बयान गऱ्यौं र फेरिः प्रत्येकलाई हामीले नष्ट गरि दियौं ।

وَلَقَدْ أَتَوْا عَلَى الْقَرْيَةِ الَّتِي أُمْطِرَتْ مَطَرَ السَّوْءِ ۚ أَفَلَمْ يَكُونُوا يَرَوْنَهَا ۚ بَلْ كَانُوا لَا يَرْجُونَ نُشُورًا ﴿٤٠﴾

४०) यिनीहरूले त्यस बस्तीको नजीकबाट पनि अवागमन गरिराखेका छन्, जसमाथि नराम्रो वृष्टि गराइएको थियो, तत्पश्चात पनि के उनीहरूले त्यसलाई देखिराखेका छैनन्,? (होइन) बरु वास्तविकता यो हो कि उनीहरू दोस्रो पटक जीवित भई उठ्ने आशा नै गरिराखेका छैनन् ?

وَإِذَا رَأَوْكَ إِن يَتَّخِذُونَكَ إِلَّا هُزُوًا أَهَٰذَا الَّذِي بَعَثَ اللَّهُ رَسُولًا ﴿٤١﴾

४१) र यिनीहरूले जब तपाईलाई देख्छन्, (त्यतिखेर) तपाईको उपहास गर्दछन्, कि के यही त्यो मानिस हो,

जसलाई अल्लाहले पैगम्बर (संदेष्टा) बनाएर पठाएको छ ?

إِن كَادَ لَيُضِلُّنَا عَنْ آلِهَتِنَا لَوْلَا أَن صَبَرْنَا عَلَيْهَا ۚ وَسَوْفَ يَعْلَمُونَ حِينَ يَرَوْنَ الْعَذَابَ مَنْ أَضَلُّ سَبِيلًا ﴿٤٢﴾

४२) यसले त हामीलाई हाम्रा पूज्यहरूबाट विमुख नै पारिदिने थियो, यदि हामी उनीहरूमा दृढ नभएको भए र तिनीहरूले जब यातना देख्नेछन् तब शीघ्र नै उनीहरूलाई थाहा भइहाल्ने छ, कि मार्गबाट को पूरै विचलित भएको थियो ।

أَرَأَيْتَ مَنِ اتَّخَذَ إِلَٰهَهُ هَوَاهُ أَفَأَنتَ تَكُونُ عَلَيْهِ وَكِيلًا ﴿٤٣﴾

४३) के तपाईले त्यस व्यक्तिलाई पनि देख्नुभयो, जसले आफ्नो इच्छा पूर्तिलाई नै आफ्नो पूज्य बनाई रहेको छ, त के तपाई त्यसको जिम्मेदार बन्नु हुने छ ?

أَمْ تَحْسَبُ أَنَّ أَكْثَرَهُمْ يَسْمَعُونَ أَوْ يَعْقِلُونَ ۚ إِنْ هُمْ إِلَّا كَالْأَنْعَامِ ۖ بَلْ هُمْ أَضَلُّ سَبِيلًا ﴿٤٤﴾

४४) के तपाईले यही सोच्नु हुन्छ कि उनीहरू मध्ये धेरैले सुन्दछन्, र बुझ्दछन् ? उनीहरू त एकदम चौपायाहरू जस्तै छन्, बरु तिनीहरू भन्दा पनि धेरै पथभ्रष्ट ।

أَلَمْ تَرَ إِلَىٰ رَبِّكَ كَيْفَ مَدَّ الظِّلَّ وَلَوْ شَاءَ لَجَعَلَهُ سَاكِنًا ثُمَّ جَعَلْنَا الشَّمْسَ عَلَيْهِ دَلِيلًا ﴿٤٥﴾

४५) के तपाईले देख्नु भएन कि तपाईको पालनहारले छाँयालाई कसरी लम्ब्याएर फिजाइदिनु भएकोछ र यदि त्यसले चाहेको भए स्थिर (छाँयालाई) राख्न सक्दथ्यो । अनि सूर्यलाई त्यसमाथि प्रमाण बनाई दियौं ।

ثُمَّ قَبَضْنَاهُ إِلَيْنَا قَبْضًا يَسِيرًا ﴿٤٦﴾

४६) अनि हामीले त्यसलाई बिस्तारै-बिस्तारै आफ्नो तर्फ तानी हाल्यौं ।

وَهُوَ الَّذِي جَعَلَ لَكُمُ الَّيْلَ لِبَاسًا وَّالنَّوْمَ سُبَاتًا وَّجَعَلَ النَّهَارَ نُشُورًا ﴿٤٧﴾

४७) र उही त हो, जसले रातलाई तिम्रो निम्ति पर्दा (वस्त्र) र निद्रालाई सर्वथा विश्राम बनायो र दिनलाई व्युँभि उठ्ने समय बनायो ।

وَهُوَ الَّذِي أَرْسَلَ الرِّيٰحَ بُشْرًا بَيْنَ يَدَيْ رَحْمَتِهِ ۚ وَأَنْزَلْنَا مِنَ السَّمَآءِ مَآءً طَهُورًا ﴿٤٨﴾

४८) र उहि त हो, जसले आफ्नो दयालुताको वर्षा अगाडि हावाहरूलाई खुशीयालीको सूचना दिन पठाउँछ र हामीले आकाशबाट पवित्र पानीको वृष्टि गर्दछौं ।

لِّنُحْـِۧيَ بِهِ بَلْدَةً مَّيْتًا وَّنُسْقِيَهُ مِمَّا خَلَقْنَآ أَنْعَامًا وَّأَنَاسِيَّ كَثِيرًا ﴿٤٩﴾

४९) ताकि यसबाट मृत शहरलाई जीवित गरौं र त्यसलाई धेरै जसो चौपायाहरू र मानिसहरूलाई, जसलाई हामीले सृष्टि गरेकाछौं, पिलाऔं ।

وَلَقَدْ صَرَّفْنٰهُ بَيْنَهُمْ لِيَذَّكَّرُوا ۖ فَأَبَىٰ أَكْثَرُ النَّاسِ إِلَّا كُفُورًا ﴿٥٠﴾

५०) र निःसंदेह हामीले यस (कुरआन) लाई विभिन्न तरिकाले मानिसहरूमा वर्णन गर्‍यौं ताकि उनीहरू ध्यान दिउन् । तर धेरै जसो मानिसहरूले कृतघ्न भएर त्यसलाई मानेनन् ।

وَلَوْ شِئْنَا لَبَعَثْنَا فِي كُلِّ قَرْيَةٍ نَّذِيرًا ﴿٥١﴾

५१) र यदि हामीले चाहेको भए हरेक बस्तीमा एक-एक डराउनेवाला पठाइदिन्थ्यौं ।

فَلَا تُطِعِ الْكٰفِرِينَ وَجٰهِدْهُمْ بِهِ جِهَادًا كَبِيرًا ﴿٥٢﴾

५२) तसर्थ तपाई इन्कार गर्नेहरूको भनाई नमान्नुस् र यस (कुरआन) द्वारा उनीहरूसित पूरै शक्तिका साथ ठूलो जिहाद गर्नुस् ।

وَهُوَ الَّذِي مَرَجَ الْبَحْرَيْنِ هٰذَا عَذْبٌ فُرَاتٌ وَّهٰذَا مِلْحٌ أُجَاجٌ ۚ وَجَعَلَ بَيْنَهُمَا بَرْزَخًا وَّحِجْرًا مَّحْجُورًا ﴿٥٣﴾

५३) र उहि त हो, जसले दुई सागरलाई मिलाइराखेको छ, एउटा मीठो छ,

तिर्खा मेटाउनेवाला र अर्को नुनिलो छ छाति पोल्नेवाला, र दुवैको बीचमा एउटा पर्दा र बलियो अवरोध बनाइदियो ।

५४) र उही त हो, जसले पानीबाट मनुष्यको सृष्टि गऱ्यो । अनि उसलाई वंशानुगत सम्बन्धहरू र ससुराली नातावाला बनायो । र निःसन्देह तिम्रो पालनहार बडो सामर्थ्यवान छ ।

وَهُوَ الَّذِي خَلَقَ مِنَ الْمَاءِ بَشَرًا فَجَعَلَهُ نَسَبًا وَصِهْرًا ۗ وَكَانَ رَبُّكَ قَدِيرًا ﴿٥٤﴾

५५) यिनीहरू अल्लाहलाई छाडि यस्तो को पूजा गर्दछन्, कि जसले उनलाई नत फाइदा पुऱ्याउन सक्छ नत नोक्सान र काफिरहरू त छदैछन् आफ्नो पालनकर्ताको विरोधी र अरुको (शैतानको) मदद गर्नेवाला ।

وَيَعْبُدُونَ مِن دُونِ اللَّهِ مَا لَا يَنفَعُهُمْ وَلَا يَضُرُّهُمْ ۗ وَكَانَ الْكَافِرُ عَلَىٰ رَبِّهِ ظَهِيرًا ﴿٥٥﴾

५६) र हामीले त तपाईलाई एउटा शुभ सूचना दिनेवाला र सचेतकर्ता बनाएर पठाएका छौं ।

وَمَا أَرْسَلْنَاكَ إِلَّا مُبَشِّرًا وَنَذِيرًا ﴿٥٦﴾

५७) भनिदिनुस् कि म यस कुरआन पुऱ्याउने कामको निम्ति तिमीसित कुनै पारिश्रमिक माग्दिन । (यस बाहेक कि) जसले चाहन्छ आफ्नो पालनकर्ता तिर जाने मार्ग अपनाइहालोस् ।

قُلْ مَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِلَّا مَن شَاءَ أَن يَتَّخِذَ إِلَىٰ رَبِّهِ سَبِيلًا ﴿٥٧﴾

५८) त्यस (अल्लाह)माथि भरोसा गर जो अमर छ र उसको पवित्रताको गुणगान गर र ऊ आफ्ना दासहरूका पापहरूको पूर्ण जानकारी राख्दछ ।

وَتَوَكَّلْ عَلَى الْحَيِّ الَّذِي لَا يَمُوتُ وَسَبِّحْ بِحَمْدِهِ ۚ وَكَفَىٰ بِهِ بِذُنُوبِ عِبَادِهِ خَبِيرًا ﴿٥٨﴾

५९) उसैले आकाशहरू र धरतीलाई र

الَّذِي خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي

سِتَّةِ أَيَّامٍ ثُمَّ اسْتَوَىٰ عَلَى الْعَرْشِ ۚ الرَّحْمَٰنُ فَاسْأَلْ بِهِ خَبِيرًا ﴿٥٩﴾

जे जति उनीहरूको बीचमा छ ६ दिनमा सृष्टि गर्‍यो, अनि सिंहासन (अर्श) माथि उच्च भयो, ऊ बडो दयावान छ, तसर्थ उसको बारेमा कुनै जानकारसँग सोध ।

وَإِذَا قِيلَ لَهُمُ اسْجُدُوا لِلرَّحْمَٰنِ قَالُوا وَمَا الرَّحْمَٰنُ أَنَسْجُدُ لِمَا تَأْمُرُنَا وَزَادَهُمْ نُفُورًا ﴿٦٠﴾

६०) जब यिनी सित भनिन्छ: कि अल्लाह-रहमानलाई ढोग तब उनीहरू भन्छन्: कि रहमान भनेको के हो ? के जसको बारेमा तपाई भन्नु हुन्छ, उसैलाई हामीले ढोगौं ? र यस आमन्त्रणले उनको घृणालाई अझ बृद्धि गरिदिन्छ ।

تَبَارَكَ الَّذِي جَعَلَ فِي السَّمَاءِ بُرُوجًا وَجَعَلَ فِيهَا سِرَاجًا وَقَمَرًا مُّنِيرًا ﴿٦١﴾

६१) त्यो बडो कल्याणकारी छ, जसले आकाशमा बुर्ज (नक्षत्र) बनायो र त्यसमा एउटा सूर्य र एउटा टल्किराखेको चन्द्र बनायो ।

وَهُوَ الَّذِي جَعَلَ اللَّيْلَ وَالنَّهَارَ خِلْفَةً لِّمَنْ أَرَادَ أَن يَذَّكَّرَ أَوْ أَرَادَ شُكُورًا ﴿٦٢﴾

६२) र उसैले रात र दिनलाई एक अर्काको पछि लागिरहनेवाला बनायो । त्यस व्यक्तिको उपदेशको लागि हो जो चेतना चाहन्छ वा कृतज्ञ हुन चाहन्छ ।

وَعِبَادُ الرَّحْمَٰنِ الَّذِينَ يَمْشُونَ عَلَى الْأَرْضِ هَوْنًا وَإِذَا خَاطَبَهُمُ الْجَاهِلُونَ قَالُوا سَلَامًا ﴿٦٣﴾

६३) अल्लाहका प्रिय दासहरू ती हुन् जो धरतीमा नम्रता पूर्वक हिंड्छन् र जब अज्ञानीहरू उनीहरूको सम्मुख अज्ञानतापूर्ण कुरा गर्दछन् त उनीहरूले सलाम होस् भन्दछन् ।

وَالَّذِينَ يَبِيتُونَ لِرَبِّهِمْ سُجَّدًا وَقِيَامًا ﴿٦٤﴾

६४) र जो आफ्ना पालनकर्ताको अगाडि ढोग्दै र उभिनेगरी रातहरू व्यतीत गर्दछन् ।

وَالَّذِينَ يَقُولُونَ رَبَّنَا اصْرِفْ عَنَّا عَذَابَ

६५) र जसले यो प्रार्थना गर्दछन्: कि हे

جَهَنَّمَ ۖ إِنَّ عَذَابَهَا كَانَ غَرَامًا ﴿٦٥﴾

हाम्रा पालनकर्ता ! नर्कको यातनालाई हामीबाट टाढा गरिदेऊ । निश्चय नै उसको यातना धेरै दुःखदायि छ ।

إِنَّهَا سَاءَتْ مُسْتَقَرًّا وَمُقَامًا ﴿٦٦﴾

६६) र निश्चय नै त्यो बस्ने दृष्टिकोणले नराम्रो छ र स्थानको दृष्टिकोणले पनि ।

وَالَّذِينَ إِذَا أَنفَقُوا لَمْ يُسْرِفُوا وَلَمْ يَقْتُرُوا وَكَانَ بَيْنَ ذَٰلِكَ قَوَامًا ﴿٦٧﴾

६७) र जसले खर्च गर्दा न अपव्यय गर्दछन् र न त कन्जूस्याई बरु उनीहरू यी दुवैको बीचमा रही संतुलित खर्च गर्दछन् ।

وَالَّذِينَ لَا يَدْعُونَ مَعَ اللَّهِ إِلَٰهًا آخَرَ وَلَا يَقْتُلُونَ النَّفْسَ الَّتِي حَرَّمَ اللَّهُ إِلَّا بِالْحَقِّ وَلَا يَزْنُونَ ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ يَلْقَ أَثَامًا ﴿٦٨﴾

६८) र जसले अल्लाहको साथमा कुनै अर्को पूज्यलाई पुकार्दैनन् र नाहक कुनै जीवलाई जसको हत्यालाई अल्लाहले वर्जित गरेको छ, मार्दैनन् । र न उनीहरू व्यभिचार गर्दछन् । र जसले यो काम गर्ने छ, गम्भीर पापको दण्डमा पर्नेछ ।

يُضَاعَفْ لَهُ الْعَذَابُ يَوْمَ الْقِيَامَةِ وَيَخْلُدْ فِيهِ مُهَانًا ﴿٦٩﴾

६९) कियामतको दिन उसलाई दुईगुणा यातना हुनेछ र ऊ अपमानित भई सधैं त्यसमा रहनेछ ।

إِلَّا مَن تَابَ وَآمَنَ وَعَمِلَ عَمَلًا صَالِحًا فَأُولَٰئِكَ يُبَدِّلُ اللَّهُ سَيِّئَاتِهِمْ حَسَنَاتٍ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَّحِيمًا ﴿٧٠﴾

७०) तर ती मानिसहरू बाहेक जसले तौबा (प्रायश्चित) गरे र विश्वास गरे र असल कर्म गरे, त यस्ता मानिसहरूको गुनाहहरूलाई अल्लाह भलो कर्महरूमा परिणत गरिदिनेछ र अल्लाह त अत्यन्त क्षमाशिल दयावान छ ।

وَمَن تَابَ وَعَمِلَ صَالِحًا فَإِنَّهُ يَتُوبُ إِلَى اللَّهِ مَتَابًا ﴿٧١﴾

७१) र जसले तौबा गऱ्यो र असल कर्म गऱ्यो त निःसन्देह त्यो अल्लाहतिर नै प्रवृत हुन्छ ।

وَالَّذِينَ لَا يَشْهَدُونَ الزُّورَ وَإِذَا مَرُّوا بِاللَّغْوِ مَرُّوا كِرَامًا ﴿٧٢﴾

७२) र जो झूठो साक्षी दिदैनन् र जब कुनै व्यर्थका कुराहरूको समीप आउँछन्, त सज्जनता पूर्वक गइहाल्छन् ।

وَالَّذِينَ إِذَا ذُكِّرُوا بِآيَاتِ رَبِّهِمْ لَمْ يَخِرُّوا عَلَيْهَا صُمًّا وَعُمْيَانًا ﴿٧٣﴾

७३) र जब उनीहरूलाई पालनकर्ताका आयतहरू सुनाइन्छ त ती (आयतहरू) माथि उनीहरूले अन्धा र बहिरा जस्तो हुँदैनन् ।

وَالَّذِينَ يَقُولُونَ رَبَّنَا هَبْ لَنَا مِنْ أَزْوَاجِنَا وَذُرِّيَّاتِنَا قُرَّةَ أَعْيُنٍ وَاجْعَلْنَا لِلْمُتَّقِينَ إِمَامًا ﴿٧٤﴾

७४) र विन्ति गर्दछन् कि हे पालनकर्ता ! हामीलाई हाम्रा आफ्ना पत्नीहरूबाट र सन्तानहरूबाट आँखाको शीतलता प्रदान गर र हामीलाई आत्म संयमीहरूको नायक बनाई देऊ,

أُولَٰئِكَ يُجْزَوْنَ الْغُرْفَةَ بِمَا صَبَرُوا وَيُلَقَّوْنَ فِيهَا تَحِيَّةً وَسَلَامًا ﴿٧٥﴾

७५) यिनीहरूनै हुन कि जसलाई उनीहरूको धैर्यको प्रति दानस्वरूप (स्वर्गमा) अग्ला-अग्ला महल प्रदान गरिने छ र त्यहाँ (स्वर्गदूत) उनीहरूलाई दुआ र सलामको साथ स्वागत गर्नेछन् ।

خَالِدِينَ فِيهَا ۚ حَسُنَتْ مُسْتَقَرًّا وَمُقَامًا ﴿٧٦﴾

७६) त्यसमा तिनीहरू सधैं रहनेछन् र त्यो बासको निम्ति साह्रै राम्रो र उत्तम ठाउँ हो ।

قُلْ مَا يَعْبَأُ بِكُمْ رَبِّي لَوْلَا دُعَاؤُكُمْ ۖ فَقَدْ كَذَّبْتُمْ فَسَوْفَ يَكُونُ لِزَامًا ﴿٧٧﴾

७७) भनिदिनुस् कि यदि तिम्रो प्रार्थना (पुकार) नभएको भए मेरो पालन-कर्ताले तिम्रो कुनै वास्ता गर्ने थिएन । तिमीले त झूठो भनिसकेका छौ तसर्थ त्यसको यातना अवश्य नै तिमी सँग (आई) टाँसिने छ ।

# सूरतुश्शुअरा-२६



सूरतुश्शुअरा मक्की हो, यसमा २२७ आयतहरू र ११ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) ता-सीन्-मीम् ।

طٰسٓمّٓ ①

२) यी स्पष्ट किताबका आयतहरू हुन् ।

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ②

३) (हे पैगम्बर !) शायद तपाईले (यस दुःखबाट कि) यी मानिसहरूले ईमान नल्याएकाले आफ्नो प्राण नै त्यागी दिनु हुनेछ ।

لَعَلَّكَ بَاخِعٌ نَّفْسَكَ اَلَّا يَكُوْنُوْا مُؤْمِنِيْنَ ③

४) यदि हामीले चाहेको भए उनीहरू माथि अकाशबाट एउटा यस्तो निशानी उतार्न सक्थ्यौं । कि जसको अगाडि उनीहरूका टाउको दीनताले झुकिरहुन् ।

اِنْ نَّشَاْ نُنَزِّلْ عَلَيْهِمْ مِّنَ السَّمَآءِ اٰيَةً فَظَلَّتْ اَعْنَاقُهُمْ لَهَا خٰضِعِيْنَ ④

५) र उनीहरूको पासमा रहमानको तर्फबाट जुन नवीन नसीहत पनि आउँछ, उनीहरू त्यसबाट विमुख हुने भइहाले ।

وَمَا يَاْتِيْهِمْ مِّنْ ذِكْرٍ مِّنَ الرَّحْمٰنِ مُحْدَثٍ اِلَّا كَانُوْا عَنْهُ مُعْرِضِيْنَ ⑤

६) अब जबकि उनीहरूले झूठो भनिसकेका छन् त शीघ्र नै उनीहरूले गरेको उपहासको वास्तविकता जानी हाल्नेछन् ।

فَقَدْ كَذَّبُوْا فَسَيَاْتِيْهِمْ اَنْۢبٰٓؤُا مَا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ⑥

७) के उनीहरूले धरतीलाई देखेनन् कि त्यसमा कसरी हामीले सबै प्रकारका उत्तम जोडाहरू उमारेका छौं ।

اَوَلَمْ يَرَوْا اِلَى الْاَرْضِ كَمْ اَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ زَوْجٍ كَرِيْمٍ ⑦

| | |
|---|---|
| ८) निश्चय नै यसमा ठूलो निशानी छ, (यसपछि पनि) उनीहरू मध्ये अधिकांश मान्नेवाला छैनन् । | إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿٨﴾ |
| ९) र निश्चय नै तिम्रो पालनकर्ता नै हो, जो अधिपत्यशाली, अत्यन्त दयावान छ । | وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿٩﴾ |
| १०) र जब तपाईको पालनकर्ताले "मूसालाई" भन्यो कि अत्याचारी मानिसहरूको पासमा जाऊ । | وَإِذْ نَادَىٰ رَبُّكَ مُوسَىٰ أَنِ ائْتِ الْقَوْمَ الظَّالِمِينَ ﴿١٠﴾ |
| ११) "फिरऔनको" जातिबन्धुको पासमा, के यिनीहरू आत्मसंयम् अपनाउँदैनन् ? | قَوْمَ فِرْعَوْنَ ۚ أَلَا يَتَّقُونَ ﴿١١﴾ |
| १२) मूसाले भनेः कि मेरो पालनकर्ता ! मलाई त भय छ कि कतै यिनीहरूले मलाई झूठा नठानुन् । | قَالَ رَبِّ إِنِّي أَخَافُ أَن يُكَذِّبُونِ ﴿١٢﴾ |
| १३) र मेरो छाति उकुस मुकुस हुन्छ र मेरो बोली रोकिन्छ, तसर्थ तिमी हारूनतिर पनि सन्देश (वह्य) पठाइदेऊ । | وَيَضِيقُ صَدْرِي وَلَا يَنطَلِقُ لِسَانِي فَأَرْسِلْ إِلَىٰ هَارُونَ ﴿١٣﴾ |
| १४) र उनीहरूको म माथि मेरो एउटा कसूरको दावी पनि छ, तसर्थ मलाई यो पनि भय छ कि मलाई मारिहाल्नेछन् । | وَلَهُمْ عَلَيَّ ذَنبٌ فَأَخَافُ أَن يَقْتُلُونِ ﴿١٤﴾ |
| १५) अल्लाहबाट आदेश भयो कदापि यस्तो हुने छैन तिमी दुवैजना हाम्रा निशानीहरू लिएर जाऊ, हामी तिम्रो साथमा सुन्नेवाला छौं । | قَالَ كَلَّا ۖ فَاذْهَبَا بِآيَاتِنَا ۖ إِنَّا مَعَكُم مُّسْتَمِعُونَ ﴿١٥﴾ |
| १६) (अतः) तिमी दुवै फिरऔनको पासमा जाऊ र भनः कि निश्चित रूपले | فَأْتِيَا فِرْعَوْنَ فَقُولَا إِنَّا رَسُولُ رَبِّ الْعَالَمِينَ ﴿١٦﴾ |

हामी संसारका पालनकर्ताको तर्फबाट पठाइएका हौं ।

أَنْ أَرْسِلْ مَعَنَا بَنِىٓ إِسْرَٰٓءِيلَ ﴿١٧﴾

१७) र (त्यसकारण आएका हौं) कि तिमीहरू बनी इस्राईललाई हाम्रो साथमा जाने अनुमति दिनु ।

قَالَ أَلَمْ نُرَبِّكَ فِينَا وَلِيدًا وَلَبِثْتَ فِينَا مِنْ عُمُرِكَ سِنِينَ ﴿١٨﴾

१८) फिरऔनले (मूसासित) भन्यो कि के हामीले तिमीलाई तिम्रो बाल्यकालमा आफूकहाँ पालेका थिएनौं ? र तिमीले तिम्रो जीवनका धेरै वर्ष हामी कहाँ बिताएका थिएनौ ?

وَفَعَلْتَ فَعْلَتَكَ ٱلَّتِى فَعَلْتَ وَأَنتَ مِنَ ٱلْكَٰفِرِينَ ﴿١٩﴾

१९) फेरि तिमीले आफ्नो त्यो काम गऱ्यौ जुन तिमीलाई थाहा छ । तिमी साह्रै नै कृतघ्न छौ ।

قَالَ فَعَلْتُهَآ إِذًا وَأَنَا۠ مِنَ ٱلضَّآلِّينَ ﴿٢٠﴾

२०) (मूसाले) भने: कि (हो) त्यो काम मैले त्यस बेला गरेको थिएँ जब म बाटो बिर्सिएकाहरू मध्येका थिएँ ।

فَفَرَرْتُ مِنكُمْ لَمَّا خِفْتُكُمْ فَوَهَبَ لِى رَبِّى حُكْمًا وَجَعَلَنِى مِنَ ٱلْمُرْسَلِينَ ﴿٢١﴾

२१) अनि जब मलाई तिम्रो भय लाग्यो त म तिमी कहाँबाट भागिहालें, अनि मेरो पालनकर्ताले मलाई आदेश र ज्ञान प्रदान गऱ्यो र मलाई आफ्ना सन्देशवाहक मध्येको बनायो ।

وَتِلْكَ نِعْمَةٌ تَمُنُّهَا عَلَىَّ أَنْ عَبَّدتَّ بَنِىٓ إِسْرَٰٓءِيلَ ﴿٢٢﴾

२२) के तिम्रो यही भलाई हो म माथि जुन तिमीले देखाई रहेका छौ कि तिमीले बनि इस्राईललाई दास बनाएर राखेका छौ ।

قَالَ فِرْعَوْنُ وَمَا رَبُّ ٱلْعَٰلَمِينَ ﴿٢٣﴾

२३) फिरऔनले भन्यो: कि सारा संसारको मालिक भनेको के हो ?

قَالَ رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ؕ اِنْ كُنْتُمْ مُّوْقِنِيْنَ ﴿۲۴﴾

२४) उनले भने: कि ऊ आकाशहरू र पृथ्वी र जे जति त्यसको बीचमा छन् सबैको पालनकर्ता हो । यदि तिमी ईमान वाला छौ भने ?

قَالَ لِمَنْ حَوْلَهٗۤ اَلَا تَسْتَمِعُوْنَ ﴿۲۵﴾

२५) फिरऔनले आफ्ना वरिपरिका मानिसहरूलाई भन्यो कि तिमीहरू सुनिरहेका छैनौं ।

قَالَ رَبُّكُمْ وَرَبُّ اٰبَآئِكُمُ الْاَوَّلِيْنَ ﴿۲۶﴾

२६) मूसाले भने कि ऊ तिम्रो र तिम्रा बाबुबाजेको पालनकर्ता हो ।

قَالَ اِنَّ رَسُوْلَكُمُ الَّذِيْۤ اُرْسِلَ اِلَيْكُمْ لَمَجْنُوْنٌ ﴿۲۷﴾

२७) फिरऔनले भन्यो: कि मानिसहरू हो यो संदेष्टा (पैगम्बर) जुन तिमीहरूतिर पठाइएको छ, बिलकुल्लै पागल छ ।

قَالَ رَبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ وَمَا بَيْنَهُمَا ؕ اِنْ كُنْتُمْ تَعْقِلُوْنَ ﴿۲۸﴾

२८) मूसा (अलै)ले भने: कि पूर्व र पश्चिम र जे-जति यी दुवैको बीचमा छन् सबैको रब (पालनकर्ता) पनि उही हो, यदि तिमीमा बुझ्ने बुद्धि छ भने ।

قَالَ لَئِنِ اتَّخَذْتَ اِلٰهًا غَيْرِيْ لَاَجْعَلَنَّكَ مِنَ الْمَسْجُوْنِيْنَ ﴿۲۹﴾

२९) फिरऔनले भन्यो: कि सुन यदि तिमीले म बाहेक अरु कसैलाई पूज्य बनायौ भने, मैले तिमीलाई बन्दी बनाएर राख्छु ।

قَالَ اَوَلَوْ جِئْتُكَ بِشَيْءٍ مُّبِيْنٍ ﴿۳۰﴾

३०) मूसा (अलै)ले भने कि यदि म तिम्रो पासमा कुनै स्पष्ट कुरा ल्याऊँ तैपनि ?

قَالَ فَاْتِ بِهٖۤ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ﴿۳۱﴾

३१) फिरऔनले भन्यो, यदि तिमी साँचो हौ भने त्यसलाई (ल्याएर) पेश गर ।

فَاَلْقٰى عَصَاهُ فَاِذَا هِيَ ثُعْبَانٌ مُّبِيْنٌ ﴿۳۲﴾

३२) अनि उनले (मूसाले) आफ्नो लट्ठी

त्यतीबेला (जमिनमा) फ्याँके जुन त्यतिखेरै एउटा प्रत्यक्ष अजिङ्गर बनिहाल्यो ।

وَنَزَعَ يَدَهُ فَإِذَا هِيَ بَيْضَاءُ لِلنَّاظِرِينَ ﴿٣٣﴾

३३) र आफ्नो हात जब बाहिर निकाले तब त्यतिखेरै त्यो हेर्नेहरूको अगाडि सेतो टल्कने देखिन थाल्यो ।

قَالَ لِلْمَلَإِ حَوْلَهُ إِنَّ هَٰذَا لَسَاحِرٌ عَلِيمٌ ﴿٣٤﴾

३४) फिरऔनले आफ्ना वरिपरिका नायकहरूसित भन्यो: कि निश्चय नै यो त ठूलो जादूगर हो ।

يُرِيدُ أَن يُخْرِجَكُم مِّنْ أَرْضِكُم بِسِحْرِهِ فَمَاذَا تَأْمُرُونَ ﴿٣٥﴾

३५) यसले चाहन्छ, कि आफ्नो जादूको शक्तिले तिमीलाई तिम्रो भूमिबाट निकालिदेओस् तसर्थ तिम्रो के विचार छ ?

قَالُوا أَرْجِهْ وَأَخَاهُ وَابْعَثْ فِي الْمَدَائِنِ حَاشِرِينَ ﴿٣٦﴾

३६) उनीहरूले भने: कि तपाईले यसलाई र त्यसको भाइलाई समय दिनुस् र सबै शहरहरूमा अग्रदूतहरूलाई पठाई दिनुहोस् ।

يَأْتُوكَ بِكُلِّ سَحَّارٍ عَلِيمٍ ﴿٣٧﴾

३७) ताकि सबै प्रविण जादूगरलाई तपाईको पासमा ल्याउन् ।

فَجُمِعَ السَّحَرَةُ لِمِيقَاتِ يَوْمٍ مَّعْلُومٍ ﴿٣٨﴾

३८) अनि एक निश्चित दिनको समयमा सबै जादूगरहरू एकत्रित गरिए ।

وَقِيلَ لِلنَّاسِ هَلْ أَنتُم مُّجْتَمِعُونَ ﴿٣٩﴾

३९) र सर्वसाधारण मानिसहरूसित भनियो: कि तिमी (सबै) भेला हुनुपर्दछ,

لَعَلَّنَا نَتَّبِعُ السَّحَرَةَ إِن كَانُوا هُمُ الْغَالِبِينَ ﴿٤٠﴾

४०) ताकि यदि जादूगरहरू विजयी हुन्छन् भने हामी उनकै अनुयायी भइहाल्छौं ।

فَلَمَّا جَاءَ السَّحَرَةُ قَالُوا لِفِرْعَوْنَ أَئِنَّ لَنَا لَأَجْرًا إِن كُنَّا نَحْنُ الْغَالِبِينَ ﴿٤١﴾

४१) जादुगरहरू आएर फिरऔनसित भन्न थाले: कि यदि हामी विजयी

भयौं भने के हामीलाई पुरस्कार पनि प्राप्त हुनेछ ?

قَالَ نَعَمْ وَإِنَّكُمْ إِذًا لَّمِنَ الْمُقَرَّبِينَ ﴿٤٢﴾

४२) पिरऔनले भन्यो:, हो र निश्चय नै तिमी त्यसबेला मेरो दरबारिया मानिसहरू मध्येबाट भइहाल्नेछौ ।

قَالَ لَهُم مُّوسَىٰ أَلْقُوا مَا أَنتُم مُّلْقُونَ ﴿٤٣﴾

४३) मूसाले उनीहरूसित (जादूगरहरू सित) भने: कि जे कुरा फ्याँक्नु छ फ्याँक ।

فَأَلْقَوْا حِبَالَهُمْ وَعِصِيَّهُمْ وَقَالُوا بِعِزَّةِ فِرْعَوْنَ إِنَّا لَنَحْنُ الْغَالِبُونَ ﴿٤٤﴾

४४) तब उनीहरूले आफ्नो डोरी र लट्ठीहरू फ्याँके र भन्न थाले: कि फिरऔनको प्रतापले हामी विजयी हुनेछौं ।

فَأَلْقَىٰ مُوسَىٰ عَصَاهُ فَإِذَا هِيَ تَلْقَفُ مَا يَأْفِكُونَ ﴿٤٥﴾

४५) अनि मूसाले पनि आफ्नो लट्ठी (भूईंमा) फ्याँके जसले ती कुराहरूलाई, जुनकि जादुगरहरूले बनाएका थिए, निल्न थाल्यो ।

فَأُلْقِيَ السَّحَرَةُ سَاجِدِينَ ﴿٤٦﴾

४६) यो हेरेर स्वस्फूर्ति ढंगले सिज्दा गरे ।

قَالُوا آمَنَّا بِرَبِّ الْعَالَمِينَ ﴿٤٧﴾

४७) (र) भन्न थाले कि हामीले सारा संसारको पालनहारमाथि ईमान ल्यायौं ।

رَبِّ مُوسَىٰ وَهَارُونَ ﴿٤٨﴾

४८) अर्थात् मूसा र हारूनको पालनलहार माथि ।

قَالَ آمَنتُمْ لَهُ قَبْلَ أَنْ آذَنَ لَكُمْ إِنَّهُ لَكَبِيرُكُمُ الَّذِي عَلَّمَكُمُ السِّحْرَ فَلَسَوْفَ تَعْلَمُونَ لَأُقَطِّعَنَّ أَيْدِيَكُمْ وَأَرْجُلَكُم مِّنْ خِلَافٍ وَلَأُصَلِّبَنَّكُمْ أَجْمَعِينَ ﴿٤٩﴾

४९) फिरऔनले भन्यो:, कि मेरो आज्ञा बेगैर तिमीहरूले उसमाथि ईमान ल्यायौ ? निश्चय नै यही तिमी सबैको प्रमुख नायक हो, जसले तिमीलाई जादू सिखाएको छ ।

तसर्थ शीघ्र नै तिमीहरूले थाहा पाइहाल्ने छौ । म शपथ लिन्छु कि म तिम्रा हात र खुट्टाहरू विपरित दिशाहरूबाट कटाइदिनेछु र तिमी सबैलाई फाँसीमा झुन्ड्याइदिनेछु ।

قَالُوا لَا ضَيْرَ ۖ إِنَّا إِلَىٰ رَبِّنَا مُنقَلِبُونَ ﴿٥٠﴾

५०) उनीहरूले भनेः केही डर छैन । निःसंदेह हामी त आफ्नो पालनकर्तातिर नै फर्केर जानेवाला छौं ।

إِنَّا نَطْمَعُ أَن يَغْفِرَ لَنَا رَبُّنَا خَطَايَانَا أَن كُنَّا أَوَّلَ الْمُؤْمِنِينَ ﴿٥١﴾

५१) हामीलाई मात्र यो नै आशा छः कि हाम्रो पालनकर्ता हाम्रो त्रुटिहरूलाई क्षमा गरिदिनेछ, किनभने हामीले सबभन्दा पहिला ईमान ल्यायौं ।

وَأَوْحَيْنَا إِلَىٰ مُوسَىٰ أَنْ أَسْرِ بِعِبَادِي إِنَّكُم مُّتَّبَعُونَ ﴿٥٢﴾

५२) र हामीले "मूसातिर" "वह्य" (अल्लाहको वाणी) पठायौं कि मेरा भक्तहरूलाई लिएर रातै-रात निस्किहाल, निश्चय नै तिमीलाई पछ्याइनेछ ।

فَأَرْسَلَ فِرْعَوْنُ فِي الْمَدَائِنِ حَاشِرِينَ ﴿٥٣﴾

५३) यसपछि फिरऔनले शहरहरूमा दूतहरू पठायो ।

إِنَّ هَٰؤُلَاءِ لَشِرْذِمَةٌ قَلِيلُونَ ﴿٥٤﴾

५४) किन "कि यिनीहरू एकदम सानो संख्यामा छन् ।"

وَإِنَّهُمْ لَنَا لَغَائِظُونَ ﴿٥٥﴾

५५) र यिनीहरूले हामीलाई क्रोधित पारिराखेका छन् ।

وَإِنَّا لَجَمِيعٌ حَاذِرُونَ ﴿٥٦﴾

५६) र निश्चयनै हामी संख्यामा धेरै र सबै सर-सामान सहित सजग छौं ।

فَأَخْرَجْنَاهُم مِّن جَنَّاتٍ وَعُيُونٍ ﴿٥٧﴾

५७) अन्ततः हामीले उनीहरूलाई बगैंचा र पानीका श्रोतहरूबाट निष्कासित गरिदियौं ।

وَّكُنُوْزٍ وَّمَقَامٍ كَرِيْمٍ ۙ﴿٥٨﴾

५८) र खजाना र राम्रा ठाउँहरूबाट पनि।

كَذٰلِكَ ؕ وَاَوْرَثْنٰهَا بَنِيْٓ اِسْرَآءِيْلَ ؕ﴿٥٩﴾

५९) (उनीहरूको साथमा हामीले) यस्तो गऱ्यौं र यी सबै कुराहरूको उत्तराधिकारी हामीले बनी इस्राईलको सन्ततिलाई बनाइदियौं ।

فَاَتْبَعُوْهُمْ مُّشْرِقِيْنَ ﴿٦٠﴾

६०) तसर्थ फिरऔनीहरूले सूर्योदय हुनासाथ तिनीहरूलाई खोज्न हिंडे ।

فَلَمَّا تَرَآءَ الْجَمْعٰنِ قَالَ اَصْحٰبُ مُوْسٰٓى اِنَّا لَمُدْرَكُوْنَ ۚ﴿٦١﴾

६१) जब दुवै समूहले एक अर्कालाई देखी हाल्यो, तब मूसा (अलै)का साथीहरूले भन्नथाले कि हामी त निश्चय नै समातियौं ।

قَالَ كَلَّا ۚ اِنَّ مَعِيَ رَبِّيْ سَيَهْدِيْنِ ﴿٦٢﴾

६२) मूसा (अलै)ले भने, कदापि होइन मेरो पालनकर्ता मेरो साथमा छ, उसले पक्कै मलाई बाटो देखाउनेछ ।

فَاَوْحَيْنَآ اِلٰى مُوْسٰٓى اَنِ اضْرِبْ بِّعَصَاكَ الْبَحْرَ ؕ فَانْفَلَقَ فَكَانَ كُلُّ فِرْقٍ كَالطَّوْدِ الْعَظِيْمِ ۚ﴿٦٣﴾

६३) त्यसबखत हामीले मूसातिर "वह्य" पठायौं कि आफ्नो लट्ठीले समुद्र माथि प्रहार गर अनि त्यस बेला समूद्र फाटिहाल्यो र पानीको हरेक टुक्रा ठूलो पहाड जस्तो भइहाल्यो ।

وَاَزْلَفْنَا ثَمَّ الْاٰخَرِيْنَ ۚ﴿٦٤﴾

६४) र हामीले अर्को समूहलाई पनि त्यहीं निकट ल्याएर उभ्याइ दियौं ।

وَاَنْجَيْنَا مُوْسٰى وَمَنْ مَّعَهٗٓ اَجْمَعِيْنَ ۚ﴿٦٥﴾

६५) र हामीले "मूसा" र उनका साथमा भएका सबैलाई बचाइहाल्यौं ।

ثُمَّ اَغْرَقْنَا الْاٰخَرِيْنَ ؕ﴿٦٦﴾

६६) अनि अर्को समूहलाई डुबाइदियौं ।

اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ؕ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ﴿٦٧﴾

६७) नि:सन्देह यसमा ठूलो निशानी छ, तापनि उनीहरू मध्ये अधिकतर ईमानवाला छैनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿٦٨﴾

६८) र निश्चय नै तपाईको पालनकर्ता अधिपत्यशाली, अत्यन्त दयावान छ ।

وَاتْلُ عَلَيْهِمْ نَبَأَ إِبْرَاهِيمَ ﴿٦٩﴾

६९) र उनीहरूलाई इब्राहीम (अलै) को वृतान्त पनि सुनाइदिनुस्,

إِذْ قَالَ لِأَبِيهِ وَقَوْمِهِ مَا تَعْبُدُونَ ﴿٧٠﴾

७०) जब उनले आफ्नो पिता र आफ्नो जातिबन्धुका मानिसहरूसित भनेः कि तिमी कुन कुराको पूजा गर्दछौ ?

قَالُوا نَعْبُدُ أَصْنَامًا فَنَظَلُّ لَهَا عَاكِفِينَ ﴿٧١﴾

७१) उनीहरूले जवाफ दिए कि हामी मूर्तिहरूको पूजा गर्दछौं र उनीहरूको सेवामा लागिरहने छौं ।

قَالَ هَلْ يَسْمَعُونَكُمْ إِذْ تَدْعُونَ ﴿٧٢﴾

७२) (इब्राहीमले) भनेः कि, जब तिमी उनीहरूलाई पुकार्दछौ, त के उनीहरूले तिम्रो सुन्दछन् ?

أَوْ يَنْفَعُونَكُمْ أَوْ يَضُرُّونَ ﴿٧٣﴾

७३) वा तिमीलाई फाइदा दिन वा नोक्सानी पुऱ्याउन सक्दछन् ?

قَالُوا بَلْ وَجَدْنَا آبَاءَنَا كَذَٰلِكَ يَفْعَلُونَ ﴿٧٤﴾

७४) उनीहरूले भने, (यो हामी केही जान्दैनौं) बरु हामीले आफ्ना बाबु बाजेलाई यस्तै गरेको देखेका छौं ।

قَالَ أَفَرَأَيْتُمْ مَا كُنْتُمْ تَعْبُدُونَ ﴿٧٥﴾

७५) (इब्राहीमले) भने, के तिमीले देख्यौ कि जसलाई तिमी पूजिराखेका छौं,

أَنْتُمْ وَآبَاؤُكُمُ الْأَقْدَمُونَ ﴿٧٦﴾

७६) तिमी पनि र तिम्रा अघिका बाबु बाजे पनि ।

فَإِنَّهُمْ عَدُوٌّ لِي إِلَّا رَبَّ الْعَالَمِينَ ﴿٧٧﴾

७७) उनीहरू मेरा शत्रु हुन्, बाहेक अल्लाह जो ब्रह्माण्डको स्वामी हो ।

الَّذِي خَلَقَنِي فَهُوَ يَهْدِينِ ﴿٧٨﴾

७८) जसले मलाई सृष्टि गऱ्यो र उसैले मलाई मार्गदर्शन गर्दछ ।

७९) उही नै हो जसले मलाई खुवाउँछ र पिलाउँछ ।

وَالَّذِي هُوَ يُطْعِمُنِي وَيَسْقِينِ ﴿٧٩﴾

८०) र जब म बिरामी पर्दछु त उसैले मलाई निको पार्छ ।

وَإِذَا مَرِضْتُ فَهُوَ يَشْفِينِ ﴿٨٠﴾

८१) र उसैले मलाई मार्नेछ (र) पुनः जीवित गर्ने छ,

وَالَّذِي يُمِيتُنِي ثُمَّ يُحْيِينِ ﴿٨١﴾

८२) र (उही नै हो) जोसित म आशा राख्दछु, कि कियामतको दिन मेरा पापहरू क्षमा गर्नेछ ।

وَالَّذِي أَطْمَعُ أَن يَغْفِرَ لِي خَطِيئَتِي يَوْمَ الدِّينِ ﴿٨٢﴾

८३) हे ब्रह्माण्डको पालक ! मलाई निर्णय गर्ने शक्ति प्रदान गर र असल मानिसहरूमा शम्मिलित गर ।

رَبِّ هَبْ لِي حُكْمًا وَأَلْحِقْنِي بِالصَّالِحِينَ ﴿٨٣﴾

८४) र पछि आउनेहरूमा पनि मेरो राम्रो चर्चा बाँकी राख ।

وَاجْعَل لِّي لِسَانَ صِدْقٍ فِي الْآخِرِينَ ﴿٨٤﴾

८५) र मलाई उपकारहरूले भरिएको जन्नत (स्वर्ग) का उत्तराधिकारीहरूमा शम्मिलित गर ।

وَاجْعَلْنِي مِن وَرَثَةِ جَنَّةِ النَّعِيمِ ﴿٨٥﴾

८६) र मेरो बाबुलाई क्षमा गरिदेऊ । निश्चय नै ऊ पथभ्रष्ट मानिसहरू मध्येको थियो ।

وَاغْفِرْ لِأَبِي إِنَّهُ كَانَ مِنَ الضَّالِّينَ ﴿٨٦﴾

८७) र जुन दिन मानिसहरू पुनः जीवित भई उठाइनेछन् मलाई अपमानित नगर्नु ।

وَلَا تُخْزِنِي يَوْمَ يُبْعَثُونَ ﴿٨٧﴾

८८) जुन दिन धन सम्पत्ति र सन्तानहरू कुनै काम लाग्ने छैनन् ।

يَوْمَ لَا يَنفَعُ مَالٌ وَلَا بَنُونَ ﴿٨٨﴾

८९) तर फाइदावाला उही हुनेछ जो मानिस अल्लाहको पासमा पवित्र हृदय लिई जानेछ ।

إِلَّا مَنْ أَتَى اللَّهَ بِقَلْبٍ سَلِيمٍ ﴿٨٩﴾

وَأُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِينَ ﴿٩٠﴾

९०) र जन्नत संयमीहरूको एकदम समीपमा ल्याइनेछ ।

وَبُرِّزَتِ الْجَحِيمُ لِلْغَاوِينَ ﴿٩١﴾

९१) र मार्ग विचलितहरूका लागि नर्क अगाडि ल्याइने छ ।

وَقِيلَ لَهُمْ أَيْنَمَا كُنتُمْ تَعْبُدُونَ ﴿٩٢﴾

९२) र उनीहरूसित सोधिनेछः कि जसलाई तिमी पूज्दथ्यो, उनीहरू कहाँ छन् ?

مِن دُونِ اللَّهِ هَلْ يَنصُرُونَكُمْ أَوْ يَنتَصِرُونَ ﴿٩٣﴾

९३) अल्लाह बाहेक जो पूज्य थिए, के उनीहरू तिम्रो केही सहायता गर्नसक्दछन् ? वा कुनै बदला लिन सक्दछन् ?

فَكُبْكِبُوا فِيهَا هُمْ وَالْغَاوُونَ ﴿٩٤﴾

९४) अनि तिनीहरू र सबै मार्गविचलितहरू टाउको निहुऱ्याई नर्कमा हालिनेछन् ।

وَجُنُودُ إِبْلِيسَ أَجْمَعُونَ ﴿٩٥﴾

९५) र शैतानका सेनाहरू सबै (नर्कमा जानेछन्) ।

قَالُوا وَهُمْ فِيهَا يَخْتَصِمُونَ ﴿٩٦﴾

९६) (त्यहाँ) उनीहरू एक आपसमा झगाडा गर्दै भन्नेछन्,

تَاللَّهِ إِن كُنَّا لَفِي ضَلَالٍ مُّبِينٍ ﴿٩٧﴾

९७) किः "अल्लाहको शपथ ! हामी त खुल्ला रूपमा मार्गविचिलित थियौं ।"

إِذْ نُسَوِّيكُم بِرَبِّ الْعَالَمِينَ ﴿٩٨﴾

९८) जबकि हामीले तिमीलाई ब्रह्माण्डको पालनकर्ता अल्लाह बराबर ठान्दथ्यौं ।

وَمَا أَضَلَّنَا إِلَّا الْمُجْرِمُونَ ﴿٩٩﴾

९९) र हामीलाई यी अपराधीहरू बाहेक अरुले पथभ्रष्ट गरेनन् ।

فَمَا لَنَا مِن شَافِعِينَ ﴿١٠٠﴾

१००) अब हाम्रो सिफारिश गर्नेवाला कोही छैन,

وَلَا صَدِيقٍ حَمِيمٍ ﴿١٠١﴾

१०१) र न कोही घनिष्ट मित्र छ ।

فَلَوْ أَنَّ لَنَا كَرَّةً فَنَكُونَ مِنَ الْمُؤْمِنِينَ ﴿١٠٢﴾

१०२) कति राम्रो हुने थियो, यदि हामीलाई (संसारमा) पुनः एक पटक जानमिल्ने भए, त हामी पक्का र सच्चा मोमिनहरू मध्येका भैहाल्थ्यौं ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٠٣﴾

१०३) यस घटनामा निश्चय नै एउटा ठूलो निशानी छ तैपनि उनीहरू मध्ये धेरैजसोले ईमान ल्याउने छैनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٠٤﴾

१०४) र निःसन्देह तपाईको पालनकर्ता नै अधिपत्यशाली अत्यन्त दयावान छ ।

كَذَّبَتْ قَوْمُ نُوحٍ الْمُرْسَلِينَ ﴿١٠٥﴾

१०५) नूहको जाति बन्धुले पनि रसूलहरूलाई झूठा भने ।

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ نُوحٌ أَلَا تَتَّقُونَ ﴿١٠٦﴾

१०६) जब कि उनीहरूसित उनका भाइ नूहले भनेः कि के तिमीलाई अल्लाहको डर छैन ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٠٧﴾

१०७) सुन म तिम्रो लागि अल्लाहका विश्वासनिय संदेष्टा हूँ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٠٨﴾

१०८) तसर्थ तिमीहरूले अल्लाहसित डर मान्नु र मेरो भनाई मान्नु ।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ ۖ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٠٩﴾

१०९) म यस कामको निम्ति तिमीबाट कुनै पारिश्रमिक माग्दिन । मेरो पारिश्रमिक त सम्पूर्ण संसारको पालनकर्ताको जिम्मामा छ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١١٠﴾

११०) अनि अल्लाहको भयराख र मेरा आदेश पालनगर ।

قَالُوا أَنُؤْمِنُ لَكَ وَاتَّبَعَكَ الْأَرْذَلُونَ ﴿١١١﴾

१११) उनीहरूले भनेः कि के हामी तिम्रा भनाई मानौं जबकि तिम्रा मान्नेहरू अत्यन्तै नीच हुन् ।

११२) (नूहले) भने: कि मलाई के थाहा कि उनीहरू पहिला के गर्दै आएका थिए ?

قَالَ وَمَا عِلْمِي بِمَا كَانُوا يَعْمَلُونَ ﴿١١٢﴾

११३) उनीहरूको हिसाब त मेरो पालनकर्ताको जिम्मामा छ यदि तिमीमा चेतना आइदिए कति राम्रो हुने थियो ।

إِنْ حِسَابُهُمْ إِلَّا عَلَىٰ رَبِّي لَوْ تَشْعُرُونَ ﴿١١٣﴾

११४) र म मोमिनहरूलाई धपाउनेवाला होइन ।

وَمَا أَنَا بِطَارِدِ الْمُؤْمِنِينَ ﴿١١٤﴾

११५) म त स्पष्ट रूपले सचेत गर्नेवाला मात्र हूँ ।

إِنْ أَنَا إِلَّا نَذِيرٌ مُبِينٌ ﴿١١٥﴾

११६) उनीहरूले भने कि हे "नूह (अलै)" यदि तिमीले (आफ्नो यस कुराबाट) पछि हटेनौ भने तिमीढुंगा हानी मारिने मध्येका हुने छौ ।

قَالُوا لَئِنْ لَمْ تَنْتَهِ يَا نُوحُ لَتَكُونَنَّ مِنَ الْمَرْجُومِينَ ﴿١١٦﴾

११७) (नूहले) भने: कि हे मेरो पालनकर्ता ! मेरो जाति बन्धुले त मलाई असत्य भनिदियो ।

قَالَ رَبِّ إِنَّ قَوْمِي كَذَّبُونِ ﴿١١٧﴾

११८) तसर्थ तिमीले मेरो र उनीहरूको बीचमा कुनै स्पष्ट निर्णय गरिदेऊ र मलाई र जुन मोमिन मेरो साथमा छन्, उनीहरूलाई बचाइहाल ।

فَافْتَحْ بَيْنِي وَبَيْنَهُمْ فَتْحًا وَنَجِّنِي وَمَنْ مَعِيَ مِنَ الْمُؤْمِنِينَ ﴿١١٨﴾

११९) अत: हामीले उनलाई र उनका साथीहरूलाई भरेको डुङ्गामा सवार गराएर बचाइहाल्यौं ।

فَأَنْجَيْنَاهُ وَمَنْ مَعَهُ فِي الْفُلْكِ الْمَشْحُونِ ﴿١١٩﴾

१२०) तत्पश्चात शेष सबै मानिसहरूलाई हामीले डुबाई दियौं ।

ثُمَّ أَغْرَقْنَا بَعْدُ الْبَاقِينَ ﴿١٢٠﴾

१२१) नि:सन्देह यसमा ठूलो निशानी छ ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً وَمَا كَانَ أَكْثَرُهُمْ مُؤْمِنِينَ ﴿١٢١﴾

तापनि यिनीहरू मध्ये अधिकतर ईमान ल्याउनेवाला थिएनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٢٢﴾

१२२) र निःसन्देह तिम्रो रब सर्वशक्ति सम्पन्न (र) अत्यन्त दयावान छ ।

كَذَّبَتْ عَادٌ الْمُرْسَلِينَ ﴿١٢٣﴾

१२३) आदको समुदायले पनि संदेष्टाहरूलाई झूठा भने,

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ هُودٌ أَلَا تَتَّقُونَ ﴿١٢٤﴾

१२४) जबकि उनीसित उनका भाइ "हूदले" भनेः, के तिमी (अल्लाहबाट) डराउँदैनौ ?

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٢٥﴾

१२५) म त तिम्रो ईमानदार संदेष्टा (पैगम्बर) हूँ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٢٦﴾

१२६) तसर्थ अल्लाहसित भयगर र मेरो भनाई मान ।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٢٧﴾

१२७) र म यसको तिमीबाट कुनै पारिश्रमिक माँग्दिन । मेरो बदलात विश्वको पालनकर्ताको जिम्मामा छ ।

أَتَبْنُونَ بِكُلِّ رِيعٍ آيَةً تَعْبَثُونَ ﴿١٢٨﴾

१२८) के तिमीले प्रत्येक उच्च स्थानमा खेल तमाशाको लागि व्यर्थ एउटा स्मारकको निर्माण गर्दै छौ ?

وَتَتَّخِذُونَ مَصَانِعَ لَعَلَّكُمْ تَخْلُدُونَ ﴿١٢٩﴾

१२९) र ठूलो कारीगरी वाला भव्य महल बनाइरहन्छौ, लाग्दछ तिमीले सधैं यहीं बसिरहनुछ ।

وَإِذَا بَطَشْتُمْ بَطَشْتُمْ جَبَّارِينَ ﴿١٣٠﴾

१३०) र जब कसैलाई समात्छौ त पूर्ण अत्याचारी तरिकाले समात्छौ ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٣١﴾

१३१) त्यसर्थ अल्लाहसित डर र मेरो आज्ञापालन गर ।

وَاتَّقُوا الَّذِي أَمَدَّكُمْ بِمَا تَعْلَمُونَ ﴿١٣٢﴾

१३२) र उससित, तर्स जसले तिमीलाई

ती कुराहरूद्वारा सहायता गऱ्यो, जसलाई तिमी जान्दछौ ।

१३३) उसले तिमीलाई पशु र सन्तानहरूबाट मद्दत गऱ्यो ।

أَمَدَّكُم بِأَنْعَٰمٍ وَبَنِينَ ﴿١٣٣﴾

१३४) र बगैंचाहरूबाट र श्रोतहरूबाट,

وَجَنَّٰتٍ وَعُيُونٍ ﴿١٣٤﴾

१३५) मलाई तिम्रो बारेमा एउटा ठूलो दिनको यातनाको भय छ ।

إِنِّىٓ أَخَافُ عَلَيْكُمْ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٣٥﴾

१३६) उनीहरूले भन्न थाले: कि हामीलाई उपदेश गर वा नगर, बराबर छ ।

قَالُوا۟ سَوَآءٌ عَلَيْنَآ أَوَعَظْتَ أَمْ لَمْ تَكُن مِّنَ ٱلْوَٰعِظِينَ ﴿١٣٦﴾

१३७) यो त मात्र पहिलाका मानिसहरूको चल्दै आएको रीति हो ।

إِنْ هَٰذَآ إِلَّا خُلُقُ ٱلْأَوَّلِينَ ﴿١٣٧﴾

१३८) र हामीलाई कहिले पनि यातना दिइनेछैन ।

وَمَا نَحْنُ بِمُعَذَّبِينَ ﴿١٣٨﴾

१३९) उनीहरूले "हूदलाई" असत्य भने, त हामीले उनीहरूलाई नष्ट गरिहाल्यौं । नि:सन्देह यसमा निशानी छ र यिनीहरू मध्ये अक्सर ईमान वाला थिएनन् ।

فَكَذَّبُوهُ فَأَهْلَكْنَٰهُمْ ۗ إِنَّ فِى ذَٰلِكَ لَءَايَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٣٩﴾

१४०) नि:संदेह तपाईको पालनकर्ता उही हो सर्वशक्ति सम्पन्न अत्यन्त दयावान ।

وَإِنَّ رَبَّكَ لَهُوَ ٱلْعَزِيزُ ٱلرَّحِيمُ ﴿١٤٠﴾

१४१) समूदका समुदायले पनि रसूलहरूलाई असत्य भने,

كَذَّبَتْ ثَمُودُ ٱلْمُرْسَلِينَ ﴿١٤١﴾

१४२) (जबकि) उनीसित उनको भाइ "सालेहले" भने कि तिमीहरू अल्लाहसँग डराउँदैनौ ?

إِذْ قَالَ لَهُمْ أَخُوهُمْ صَٰلِحٌ أَلَا تَتَّقُونَ ﴿١٤٢﴾

१४३) नि:संदेह म त तिम्रोलागि अल्लाहका विश्वसनीय पैगम्बर हूँ।

إِنِّى لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٤٣﴾

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿١٤٤﴾

१४४) अतः तिमी अल्लाहसित डर र मेरो कुरा मान,।

وَمَآ اَسْـَٔلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ اَجْرِيَ اِلَّا عَلٰى رَبِّ الْعٰلَمِيْنَ ﴿١٤٥﴾

१४५) (र) म यस कामको लागि तिमीसित कुनै प्रतिफल माँग्दिन। मेरो प्रतिफल त सम्पूर्ण जगत्को स्वामीको जिम्मामा छ।

اَتُتْرَكُوْنَ فِيْ مَا هٰهُنَآ اٰمِنِيْنَ ﴿١٤٦﴾

१४६) के जुन कुराहरू यहाँ उपलब्ध छन्, उनीहरूमा तिमी निश्चिंत छोडिदिइनेछौ ?

فِيْ جَنّٰتٍ وَّعُيُوْنٍ ﴿١٤٧﴾

१४७) (अर्थात) बगैंचा र श्रोतहरूमा,

وَّزُرُوْعٍ وَّنَخْلٍ طَلْعُهَا هَضِيْمٌ ﴿١٤٨﴾

१४८) र खेती र यी खजूरका बगैचाहरू जसको झुप्पाहरू ताजा र कोमल हुन्छन्।

وَتَنْحِتُوْنَ مِنَ الْجِبَالِ بُيُوْتًا فٰرِهِيْنَ ﴿١٤٩﴾

१४९) र तिमीले पहाडहरूलाई काटी सुन्दर घर बनाउँदैछौ,

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿١٥٠﴾

१५०) तसर्थ अल्लाहसित डर र मैले भनेको मान।

وَلَا تُطِيْعُوْٓا اَمْرَ الْمُسْرِفِيْنَ ﴿١٥١﴾

१५१) र सीमा उल्लघंन गर्नेहरूको कुरा नमान,

الَّذِيْنَ يُفْسِدُوْنَ فِي الْاَرْضِ وَلَا يُصْلِحُوْنَ ﴿١٥٢﴾

१५२) जो देशमा दंगा फसाद मचाउँछन् र सुधार गर्दैनन्।

قَالُوْٓا اِنَّمَآ اَنْتَ مِنَ الْمُسَحَّرِيْنَ ﴿١٥٣﴾

१५३) उनीहरूले भने कि तिमी त जादूले मोहित पारिएका मध्येबाट हौ।

مَآ اَنْتَ اِلَّا بَشَرٌ مِّثْلُنَا ۚ فَاْتِ بِاٰيَةٍ اِنْ كُنْتَ مِنَ الصّٰدِقِيْنَ ﴿١٥٤﴾

१५४) तिमी त हामी जस्तै मानिस हौ। यदि तिमी साँचो हौ भने कुनै चमत्कार प्रस्तुत गर।

१५५) (सालेहले) भने (हेर) यो ऊँटनी हो, एक दिन यसको पानी पिउने पालो हो, र एक निश्चित दिन पानी लिने पालो तिम्रो हो ।

قَالَ هٰذِهٖ نَاقَةٌ لَّهَا شِرْبٌ وَّلَكُمْ شِرْبُ يَوْمٍ مَّعْلُوْمٍ ﴿١٥٥﴾

१५६) खबरदार ! यसलाई कुनै कष्ट नपुऱ्याउनु, अन्यथा तिमीलाई एकबडो दिनको यातनाले समात्ने छ ।

وَلَا تَمَسُّوْهَا بِسُوْٓءٍ فَيَاْخُذَكُمْ عَذَابُ يَوْمٍ عَظِيْمٍ ﴿١٥٦﴾

१५७) तैपनि उनीहरूले त्यसको घुँडा काटिदिए, अनि पछि लज्जित भए ।

فَعَقَرُوْهَا فَاَصْبَحُوْا نٰدِمِيْنَ ﴿١٥٧﴾

१५८) तसर्थ उनलाई यातनाले समातिहाल्यो । नि:सन्देह यसमा निशानी छ र यिनीहरू मध्ये अधिकांश ईमान वाला थिएनन् ।

فَاَخَذَهُمُ الْعَذَابُ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيَةً ۭ وَمَا كَانَ اَكْثَرُهُمْ مُّؤْمِنِيْنَ ﴿١٥٨﴾

१५९) र नि:संदेह तपाईको पालनकर्ता सर्वशक्ति सम्पन्न र अत्यन्त दयावान छ ।

وَاِنَّ رَبَّكَ لَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿١٥٩﴾

१६०) "लूतको" जाति बन्धुले पनि रसूलहरूलाई असत्य भने,

كَذَّبَتْ قَوْمُ لُوْطِ ِۨالْمُرْسَلِيْنَ ﴿١٦٠﴾

१६१) (जब) उनीहरूसित उनका भाइ "लूतले" भने कि तिमी अल्लाह सित किन डराउँदैनौ ?

اِذْ قَالَ لَهُمْ اَخُوْهُمْ لُوْطٌ اَلَا تَتَّقُوْنَ ﴿١٦١﴾

१६२) नि:संदेह म तिम्रो लागि विश्वसनीय रसूल हूँ,

اِنِّىْ لَكُمْ رَسُوْلٌ اَمِيْنٌ ﴿١٦٢﴾

१६३) तसर्थ तिमी अल्लाहसित डर र मेरो भनाई मान,

فَاتَّقُوا اللّٰهَ وَاَطِيْعُوْنِ ﴿١٦٣﴾

१६४) र म तिमीसित यसको प्रतिफल माँग्दिन । मेरो प्रतिफल त विश्वको पालनकर्ताको जिम्मामा छ ।

وَمَآ اَسْـَٔــلُكُمْ عَلَيْهِ مِنْ اَجْرٍ ۚ اِنْ اَجْرِيَ اِلَّا عَلٰي رَبِّ الْعٰلَمِيْنَ ﴿١٦٤﴾

أَتَأْتُونَ الذُّكْرَانَ مِنَ الْعَالَمِينَ ﴿١٦٥﴾

१६५) के संसारमा तिमी यस्ता हौ जो पुरुषसंग व्यभिचार गर्दछौ ?

وَتَذَرُونَ مَا خَلَقَ لَكُمْ رَبُّكُمْ مِنْ أَزْوَاجِكُمْ بَلْ أَنْتُمْ قَوْمٌ عَادُونَ ﴿١٦٦﴾

१६६) र तिम्रो पालनकर्ताले तिम्रो निम्ति जुन महिलाहरूलाई तिम्रा पत्नीहरू बनाएको छ, उनीहरूलाई परित्याग गरिदिन्छौ । सत्य कुरा त यो हो कि तिमी सीमा उल्लघंन गर्नेवालाहरू नै हौ ।

قَالُوا لَئِنْ لَمْ تَنْتَهِ يَا لُوطُ لَتَكُونَنَّ مِنَ الْمُخْرَجِينَ ﴿١٦٧﴾

१६७) उनीहरूले जवाफ दिए कि हे ''लूत''! यदि तिमी मान्ने छैनौ भने देश निकाला गरिनेछौ ।

قَالَ إِنِّي لِعَمَلِكُمْ مِنَ الْقَالِينَ ﴿١٦٨﴾

१६८) उनले भने कि म तिमीहरूको कामबाट अत्यन्त अप्रसन्न छु ।

رَبِّ نَجِّنِي وَأَهْلِي مِمَّا يَعْمَلُونَ ﴿١٦٩﴾

१६९) हे मेरो पालनकर्ता ! मलाई र मेरो परिवारलाई (मान्नेवालाहरूलाई) जुन काम यिनीहरूले गर्दछन्, त्यसको परिणामबाट बचाऊ ।

فَنَجَّيْنَاهُ وَأَهْلَهُ أَجْمَعِينَ ﴿١٧٠﴾

१७०) तसर्थ हामीले उनलाई र उनका साथदिने सबैलाई बचायौं ।

إِلَّا عَجُوزًا فِي الْغَابِرِينَ ﴿١٧١﴾

१७१) तर एउटी बृद्धा (बाहेक) जुन पछि रहनेहरू मध्येकी थिई ।

ثُمَّ دَمَّرْنَا الْآخَرِينَ ﴿١٧٢﴾

१७२) त्यस उपरान्त हामीले अरु सबैलाई नष्ट गरिहाल्यौं ।

وَأَمْطَرْنَا عَلَيْهِمْ مَطَرًا فَسَاءَ مَطَرُ الْمُنْذَرِينَ ﴿١٧٣﴾

१७३) र हामीले उनीहरूमाथि एउटा विशेष प्रकारको वर्षा गरायौं, जुन वर्षा अत्यन्त नराम्रो थियो र ती चेताइएका मानिसहरू माथि पर्‍यो ।

१७४) यो घटना पनि पूरै निशानी छ र उनीहरू मध्ये पनि अक्सर ईमान ल्याउनेवाला थिएनन् ।

إِنَّ فِي ذَٰلِكَ لَآيَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٧٤﴾

१७५) र निःसंन्देह तिम्रो पालनकर्ता उही हो अधिपत्यशाली र अत्यन्त दयावान ।

وَإِنَّ رَبَّكَ لَهُوَ الْعَزِيزُ الرَّحِيمُ ﴿١٧٥﴾

१७६) "ऐका:" वालाले (वनमा बस्नेहरू) पनि रसूलहरूलाई झूठा भने,

كَذَّبَ أَصْحَابُ الْأَيْكَةِ الْمُرْسَلِينَ ﴿١٧٦﴾

१७७) जब कि उनीसित "शुऐबले" भने: कि तिमी किन डराउँदैनौं,

إِذْ قَالَ لَهُمْ شُعَيْبٌ أَلَا تَتَّقُونَ ﴿١٧٧﴾

१७८) निःसंन्देह म त तिम्रो लागि विश्वसनीय पैगम्बर हूँ,

إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٧٨﴾

१७९) तसर्थ अल्लाहसित डर र मेरो भनाई मान ।

فَاتَّقُوا اللَّهَ وَأَطِيعُونِ ﴿١٧٩﴾

१८०) र म यस (काम) को तिमीसित कुनै प्रतिफल माँग्दिन । मेरो प्रतिफल त संसारका पालनकर्ताको जिम्मामा छ ।

وَمَا أَسْأَلُكُمْ عَلَيْهِ مِنْ أَجْرٍ ۖ إِنْ أَجْرِيَ إِلَّا عَلَىٰ رَبِّ الْعَالَمِينَ ﴿١٨٠﴾

१८१) (हेर) नापतौल पूरा गर्ने गर र कम दिनेहरूमा शम्मिलित नहोऊ ।

أَوْفُوا الْكَيْلَ وَلَا تَكُونُوا مِنَ الْمُخْسِرِينَ ﴿١٨١﴾

१८२) र तराजु सिधा पारेर ठीक ढंगले तौल्ने गर ।

وَزِنُوا بِالْقِسْطَاسِ الْمُسْتَقِيمِ ﴿١٨٢﴾

१८३) र मानिसहरूलाई उनका चीजहरू कम पारेर नदेऊ र धरतीमा उत्पात मच्चाउँदै नहिंड ।

وَلَا تَبْخَسُوا النَّاسَ أَشْيَاءَهُمْ وَلَا تَعْثَوْا فِي الْأَرْضِ مُفْسِدِينَ ﴿١٨٣﴾

१८४) उस अल्लाह सित डराऊ जसले तिमीलाई र अघिका पुस्ताहरूलाई सृष्टि गरेको हो ।

وَاتَّقُوا الَّذِي خَلَقَكُمْ وَالْجِبِلَّةَ الْأَوَّلِينَ ﴿١٨٤﴾

قَالُوٓا۟ إِنَّمَآ أَنتَ مِنَ ٱلْمُسَحَّرِينَ ﴿١٨٥﴾

१८५) उनीहरूले भनेः कि तिमी त जादू गरिएकोहरू मध्येका हौ ।

وَمَآ أَنتَ إِلَّا بَشَرٌ مِّثْلُنَا وَإِن نَّظُنُّكَ لَمِنَ ٱلْكَٰذِبِينَ ﴿١٨٦﴾

१८६) र तिमी त हामी जस्तै एउटा मानिस हौ र हाम्रो विचारमा तिमी झूठो हौ ।

فَأَسْقِطْ عَلَيْنَا كِسَفًا مِّنَ ٱلسَّمَآءِ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿١٨٧﴾

१८७) यदि तिमी साँचो हौ भने हामीमाथि आकाशको (एउटा) टुक्रा खसाल ।

قَالَ رَبِّىٓ أَعْلَمُ بِمَا تَعْمَلُونَ ﴿١٨٨﴾

१८८) (शुऐबले) भने कि, जुन काम तिमीले गर्दछौ, मेरो पालनकर्ता त्यसलाई राम्ररी जान्दछ ।

فَكَذَّبُوهُ فَأَخَذَهُمْ عَذَابُ يَوْمِ ٱلظُّلَّةِ ۚ إِنَّهُۥ كَانَ عَذَابَ يَوْمٍ عَظِيمٍ ﴿١٨٩﴾

१८९) किन भने उनीहरू उनलाई झूठा भनिहाले । त्यसकारण छायाँवाला दिनको यातनाले उनीहरूलाई समातिहाल्यो । निश्चय नै त्यो ठूलो (दिनको) यातना थियो ।

إِنَّ فِى ذَٰلِكَ لَءَايَةً ۖ وَمَا كَانَ أَكْثَرُهُم مُّؤْمِنِينَ ﴿١٩٠﴾

१९०) निःसन्देह यसमा ठूलो निशानी छ तर यिनीहरू मध्ये धेरै ईमानवाला थिएनन् ।

وَإِنَّ رَبَّكَ لَهُوَ ٱلْعَزِيزُ ٱلرَّحِيمُ ﴿١٩١﴾

१९१) र निश्चय नै तिम्रो पालनकर्ता त उही हो अधिपत्यशाली र अत्यन्त दयावाला ।

وَإِنَّهُۥ لَتَنزِيلُ رَبِّ ٱلْعَٰلَمِينَ ﴿١٩٢﴾

१९२) र कुनै शंका र संदेह बिना यो (कुरआन) संसारको पालनहारद्वारा उतारिएको हो ।

نَزَلَ بِهِ ٱلرُّوحُ ٱلْأَمِينُ ﴿١٩٣﴾

१९३) यसलाई विश्वसनीय फरिश्ताले लिएर आएको हो ।

عَلَىٰ قَلْبِكَ لِتَكُونَ مِنَ ٱلْمُنذِرِينَ ﴿١٩٤﴾

१९४) तपाईको हृदयमा उतारियो ताकि तपाई (मानिसहरूलाई) सावधान गर्नेहरू मध्येको भई हाल्नुस् ।

بِلِسَانٍ عَرَبِيٍّ مُّبِينٍ ﴿١٩٥﴾

१९५) (र) स्पष्ट अरबी भाषामा छ ।

وَإِنَّهُۥ لَفِي زُبُرِ ٱلْأَوَّلِينَ ﴿١٩٦﴾

१९६) र यस किताबको चर्चा अगाडिका संदेष्टाहरूको किताबमा पनि गरिएको छ ।

أَوَلَمْ يَكُن لَّهُمْ ءَايَةً أَن يَعْلَمَهُۥ عُلَمَٰٓؤُا۟ بَنِيٓ إِسْرَٰٓءِيلَ ﴿١٩٧﴾

१९७) के उनीहरूको लागि यो निशानी प्रयाप्त छैन, कि कुरआनको सच्चाईलाई इस्राईलका विद्वानहरूले पनि जान्दछन् ।

وَلَوْ نَزَّلْنَٰهُ عَلَىٰ بَعْضِ ٱلْأَعْجَمِينَ ﴿١٩٨﴾

१९८) र यदि हामीले यसलाई अरबीभाषा बाहेक अरु कुनै भाषाभाषीमाथि अवतरण गरेको भए ।

فَقَرَأَهُۥ عَلَيْهِم مَّا كَانُوا۟ بِهِۦ مُؤْمِنِينَ ﴿١٩٩﴾

१९९) र उसले यिनीहरूलाई त्यो पढेर सुनाउँदा यिनीहरूले यसलाई मान्दैनथे ।

كَذَٰلِكَ سَلَكْنَٰهُ فِي قُلُوبِ ٱلْمُجْرِمِينَ ﴿٢٠٠﴾

२००) यसै प्रकार हामीले अपराधीहरूका हृदयमा त्यस इन्कारीलाई बसालिदियौं ।

لَا يُؤْمِنُونَ بِهِۦ حَتَّىٰ يَرَوُا۟ ٱلْعَذَابَ ٱلْأَلِيمَ ﴿٢٠١﴾

२०१) र उनीहरूले जबसम्म कष्टदायी यातना देख्दैनन् ईमान ल्याउने छैनन् ।

فَيَأْتِيَهُم بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ ﴿٢٠٢﴾

२०२) त्यो कष्ट उनीहरू माथि एक्कासी आइपर्ने छ र उनीहरूलाई थाहा पनि हुनेछैन ।

فَيَقُولُوا۟ هَلْ نَحْنُ مُنظَرُونَ ﴿٢٠٣﴾

२०३) त्यो बेला भन्नेछन्: के हामीले केही मोहलत पाउनेछौं ?

أَفَبِعَذَابِنَا يَسْتَعْجِلُونَ ﴿٢٠٤﴾

२०४) त के उनीहरूले हाम्रो यातनालाई शीघ्र चाहिराखेका छन् ?

| | |
|---|---|
| २०५) अच्छा, यो पनि बताऊ कि यदि हामीले उनीहरूलाई वर्षौंसम्म फाइदा उठाउन दियौं । | أَفَرَءَيْتَ إِن مَّتَّعْنَٰهُمْ سِنِينَ ﴿٢٠٥﴾ |
| २०६) तै पनि उनीमाथि त्यो यातना आइपुग्यो, जसको बारेमा उनीहरूलाई वाचा गरिन्थ्यो, | ثُمَّ جَآءَهُم مَّا كَانُوا۟ يُوعَدُونَ ﴿٢٠٦﴾ |
| २०७) तसर्थ जुन फाइदा यिनीहरूले लिइराखेका थिए, उनीहरूलाई केही काम आउनेछैन ? | مَآ أَغْنَىٰ عَنْهُم مَّا كَانُوا۟ يُمَتَّعُونَ ﴿٢٠٧﴾ |
| २०८) र हामी कुनै बस्ती नष्ट गरेनौ तर त्यसको निम्ति सावधान गर्नेवालाहरू पठाउने गरेका थियौं । | وَمَآ أَهْلَكْنَا مِن قَرْيَةٍ إِلَّا لَهَا مُنذِرُونَ ﴿٢٠٨﴾ |
| २०९) सावधान गराई दिनको लागी, र हामी अत्याचारी होइनौं । | ذِكْرَىٰ وَمَا كُنَّا ظَٰلِمِينَ ﴿٢٠٩﴾ |
| २१०) यस कुरआनलाई शैतानहरूले लिएर अवतरित भएका होइनन् । | وَمَا تَنَزَّلَتْ بِهِ ٱلشَّيَٰطِينُ ﴿٢١٠﴾ |
| २११) उनीहरू न यसकामका लागि योग्य छन् र न उनीहरू यसको क्षमता राख्दछन् । | وَمَا يَنۢبَغِى لَهُمْ وَمَا يَسْتَطِيعُونَ ﴿٢١١﴾ |
| २१२) बरु उनीहरू त यसलाई सुन्नेबाट पनि बञ्चित गरिएका छन् । | إِنَّهُمْ عَنِ ٱلسَّمْعِ لَمَعْزُولُونَ ﴿٢١٢﴾ |
| २१३) तसर्थ तिमीले अल्लाह बाहेक कुनै अरु पूज्यलाई नपुकार्नु, अन्यथा तिमी पनि यातना पाउने मध्येका हुने छौ । | فَلَا تَدْعُ مَعَ ٱللَّهِ إِلَٰهًا ءَاخَرَ فَتَكُونَ مِنَ ٱلْمُعَذَّبِينَ ﴿٢١٣﴾ |
| २१४) र आफ्ना नजिकका आफन्तहरलाई सावधान गरिदिनु । | وَأَنذِرْ عَشِيرَتَكَ ٱلْأَقْرَبِينَ ﴿٢١٤﴾ |

२१५) ईमान ल्याएर तपाईको अनुयायी भइसकेकाहरू सित नम्रतापुर्वक व्यवहार गर्नु ।

وَاخْفِضْ جَنَاحَكَ لِمَنِ اتَّبَعَكَ مِنَ الْمُؤْمِنِينَ ﴿٢١٥﴾

२१६) यदि यी मानिसहरूले तपाईको अवज्ञा गर्दछन् भने भनिदिनुस् कि मेरो तिम्रो कर्महरूसित कुनै सरोकार छैन ।

فَإِنْ عَصَوْكَ فَقُلْ إِنِّي بَرِيءٌ مِمَّا تَعْمَلُونَ ﴿٢١٦﴾

२१७) आफ्नो सम्पूर्ण भरोसा सर्वशक्ति सम्पन्न (र) दयावान अल्लाह माथि गर ।

وَتَوَكَّلْ عَلَى الْعَزِيزِ الرَّحِيمِ ﴿٢١٧﴾

२१८) जसले तिमीलाई देखिरहन्छ (तहज्जुदको बेला) जब तिमी उठ्दछौ,

الَّذِي يَرَاكَ حِينَ تَقُومُ ﴿٢١٨﴾

२१९) र सिज्दा गर्नेहरूमा तिम्रो आवत जावतलाई पनि ।

وَتَقَلُّبَكَ فِي السَّاجِدِينَ ﴿٢١٩﴾

२२०) ऊ सबै सुन्नेवाला जान्नेवाला छ ।

إِنَّهُ هُوَ السَّمِيعُ الْعَلِيمُ ﴿٢٢٠﴾

२२१) के मैले तिमीलाई भनूँ कि शैतानहरू कस माथि ओर्लन्छन् ?

هَلْ أُنَبِّئُكُمْ عَلَىٰ مَنْ تَنَزَّلُ الشَّيَاطِينُ ﴿٢٢١﴾

२२२) तिनीहरू प्रत्येक झूठा अपराधीनिर ओर्लन्छन् ।

تَنَزَّلُ عَلَىٰ كُلِّ أَفَّاكٍ أَثِيمٍ ﴿٢٢٢﴾

२२३) जसले सुनेको कुरा भन्छन् र उनीहरूमध्ये अधिकांश झूठा छन् ।

يُلْقُونَ السَّمْعَ وَأَكْثَرُهُمْ كَاذِبُونَ ﴿٢٢٣﴾

२२४) कविहरूको अनुशरण त मार्ग विचलित मानिसहरूले नै गर्ने गर्दछन् ।

وَالشُّعَرَاءُ يَتَّبِعُهُمُ الْغَاوُونَ ﴿٢٢٤﴾

२२५) के तपाईले देख्नु भएन कि उनीहरू हरेक क्षेत्रमा बहकिरहन्छन् ।

أَلَمْ تَرَ أَنَّهُمْ فِي كُلِّ وَادٍ يَهِيمُونَ ﴿٢٢٥﴾

وَأَنَّهُمْ يَقُولُونَ مَا لَا يَفْعَلُونَ ﴿٢٢٦﴾

२२६) र उनीहरू भन्दछन् त्यो कुरा, जुन गर्दैनन् ।

إِلَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَذَكَرُوا اللَّهَ كَثِيرًا وَانتَصَرُوا مِن بَعْدِ مَا ظُلِمُوا ۗ وَسَيَعْلَمُ الَّذِينَ ظَلَمُوا أَيَّ مُنقَلَبٍ يَنقَلِبُونَ ﴿٢٢٧﴾

२२७) ती मानिसहरू बाहेक जसले ईमान ल्याए र असल काम गरे र अल्लाहलाई धेरै स्मरण गरे । र आफूमाथि अत्याचार भएपछि प्रतिकार गरे अत्याचारीहरूले शीघ्र नै थाहा पाउनेछन् कि कतातिर फर्कनु पर्नेछ ।



# सूरतुन् नम्ल-२७



सूरतुन् नम्ल मक्की हो, यसमा ९३ आयत र ७ रुकूअ् छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम
بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

طٰسٓ ۚ تِلْكَ اٰيٰتُ الْقُرْاٰنِ وَكِتَابٍ مُّبِيْنٍ ۙ﴿١﴾

१) ता–सीन, यी आयत हुन् "कुरआन"का र स्पष्ट किताबका ।

هُدًى وَّبُشْرٰى لِلْمُؤْمِنِيْنَ ۙ﴿٢﴾

२) मोमिनहरूको निम्ति मार्गदर्शन र शुभ सूचना ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ﴿٣﴾

३) जो नमाज पढ्दछन् र जकात (दान) दिदाछन् र आखिरतमा विश्वास गर्दछन् ।

اِنَّ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ زَيَّنَّا لَهُمْ اَعْمَالَهُمْ فَهُمْ يَعْمَهُوْنَ ۗ﴿٤﴾

४) जुन मानिसहरू आखिरतमाथि आस्था राख्दैनन् हामीले उनीहरूको कर्म उनीहरूको लागि शोभायमान बनाइदिएका छौं । अतः तिनीहरू भौतारिदैं छन् ।

اُولٰٓئِكَ الَّذِيْنَ لَهُمْ سُوْٓءُ الْعَذَابِ وَهُمْ فِي الْاٰخِرَةِ هُمُ الْاَخْسَرُوْنَ ﴿٥﴾

५) यिनै मानिसहरू हुन्, जसको निम्ति ठूलो यातना छ र उनीहरूनै आखिरतमा पनि ठूलो नोक्सानी भोग्नेछन् ।

وَاِنَّكَ لَتُلَقَّى الْقُرْاٰنَ مِنْ لَّدُنْ حَكِيْمٍ عَلِيْمٍ ﴿٦﴾

६) निश्चय नै तपाईलाई एउटा ठूलो तत्वदर्शी, ज्ञानवानको तर्फबाट कुरआन सिकाइदैछ ।

اِذْ قَالَ مُوْسٰى لِاَهْلِهٖٓ اِنِّيْٓ اٰنَسْتُ نَارًا ۗ سَاٰتِيْكُمْ مِّنْهَا بِخَبَرٍ اَوْ اٰتِيْكُمْ بِشِهَابٍ قَبَسٍ لَّعَلَّكُمْ تَصْطَلُوْنَ ﴿٧﴾

७) स्मरण गर जब "मूसा (अलै)ले" आफ्ना घरवालासित भनेः कि मैले आगो देखेको छु । मैले त्यहाँबाट

कुनै सूचना वा सल्किराखेको आगोको डल्लो तिम्रो पासमा लिएर आउँछु, ताकि तिमीले आफूलाई न्यानो पार ।

८) जब "मूसा (अलै)" त्यसको नजिक आए तब आवाज दिइयो कि त्यो जुन कि यस आगोमा छ, ऊ धन्य छ र जो यसको आसपासमा छ उसलाई बरकत (उपहार) दिइएको छ ! र अल्लाह उच्च र महान छ, जो सम्पूर्ण जगत्‌को पालनकर्ता हो,

فَلَمَّا جَآءَهَا نُودِيَ أَنۢ بُورِكَ مَن فِي ٱلنَّارِ وَمَنْ حَوْلَهَا وَسُبْحَٰنَ ٱللَّهِ رَبِّ ٱلْعَٰلَمِينَ ⑧

९) हे मूसा सुन ! म नै हूँ अल्लाह-अधिपत्यशाली र तत्वदर्शी सम्पन्न हूँ ।

يَٰمُوسَىٰٓ إِنَّهُۥٓ أَنَا ٱللَّهُ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ⑨

१०) तिमीले आफ्नो लट्ठी फ्यांक । जब मूसा ले त्यसलाई हल्लिराखेको सर्प जस्तो देख्नु भयो त पिठ्यू पर्काई भागे र पछाडि फर्केर पनि हेरेनन् । (आवाज आयो) हे मूसा ! नडराऊ, निःसंदेह रसूलहरू मेरो पास डराउने गर्दैनन् ।

وَأَلْقِ عَصَاكَ ۚ فَلَمَّا رَءَاهَا تَهْتَزُّ كَأَنَّهَا جَآنٌّ وَلَّىٰ مُدْبِرًا وَلَمْ يُعَقِّبْ ۚ يَٰمُوسَىٰ لَا تَخَفْ إِنِّي لَا يَخَافُ لَدَيَّ ٱلْمُرْسَلُونَ ⑩

११) तर जसले अपराध गरे अनि त्यस नराम्रो कुरा पश्चात असल कर्म गर्दछन् भने त्यस नराम्रो काम पछि त म पनि क्षमादाता, दयावान छु ।

إِلَّا مَن ظَلَمَ ثُمَّ بَدَّلَ حُسْنًۢا بَعْدَ سُوٓءٍ فَإِنِّي غَفُورٌ رَّحِيمٌ ⑪

१२) र आफ्नो हात आफ्नो काँखामा राख । त्यो बिना कुनै खराबीको उज्जवल भएर निस्किनेछ । यी नौ

وَأَدْخِلْ يَدَكَ فِي جَيْبِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوٓءٍ ۖ فِي تِسْعِ ءَايَٰتٍ إِلَىٰ فِرْعَوْنَ وَقَوْمِهِۦٓ ۚ إِنَّهُمْ كَانُوا۟ قَوْمًا فَٰسِقِينَ ⑫

"९" निशानीहरू लिएर फिरऔन र त्यसको जाति समुदायतिर जाऊ। निश्चय नै उनीहरू अवज्ञाकारी मानिसहरू हुन्।

فَلَمَّا جَآءَتْهُمْ ءَايَٰتُنَا مُبْصِرَةً قَالُوا۟ هَٰذَا سِحْرٌ مُّبِينٌ ﴿١٣﴾

१३) जब उनको पासमा आँखा खुला गर्ने हाम्रा स्पष्ट निशानीहरू पुगे, त भन्न थाले: कि यो त स्पष्ट रूपमा जादू हो।

وَجَحَدُوا۟ بِهَا وَٱسْتَيْقَنَتْهَآ أَنفُسُهُمْ ظُلْمًا وَعُلُوًّا ۚ فَٱنظُرْ كَيْفَ كَانَ عَٰقِبَةُ ٱلْمُفْسِدِينَ ﴿١٤﴾

१४) उनीहरूले अत्याचार र घमण्डको कारण इनकार गरे जबकि उनीका हृदयले विश्वास गरीसकेका थिए। तसर्थ हेर्नुस् कि ती उपद्रव गर्नेहरूको परिणाम के भयो ?

وَلَقَدْ ءَاتَيْنَا دَاوُۥدَ وَسُلَيْمَٰنَ عِلْمًا ۖ وَقَالَا ٱلْحَمْدُ لِلَّهِ ٱلَّذِى فَضَّلَنَا عَلَىٰ كَثِيرٍ مِّنْ عِبَادِهِ ٱلْمُؤْمِنِينَ ﴿١٥﴾

१५) र हामीले निश्चयनै "दाऊद" र "सुलैमान (अलै)लाई" ज्ञान प्रदान गरेका थियौं। र उनी दुवैले भने कि सम्पूर्ण प्रशंसा अल्लाहकोलगि छ जसले हामीलाई आफ्नो धेरैजसो ईमानवाला दासहरूको दाँजोमा श्रेष्ठता प्रदान गऱ्यो।

وَوَرِثَ سُلَيْمَٰنُ دَاوُۥدَ ۖ وَقَالَ يَٰٓأَيُّهَا ٱلنَّاسُ عُلِّمْنَا مَنطِقَ ٱلطَّيْرِ وَأُوتِينَا مِن كُلِّ شَىْءٍ ۖ إِنَّ هَٰذَا لَهُوَ ٱلْفَضْلُ ٱلْمُبِينُ ﴿١٦﴾

१६) र "दाऊदका" उत्तराधिकारी सुलैमान (अलै) भए र उनले भने: कि हे मानिसहरू ! हामीलाई पंक्षीहरूको बोली सिकाइएको छ र हामीलाई हरेक (जरुरी) कुरा मध्येबाट प्रदान गरिएकोछ। नि:सन्देह यो स्पष्ट रूपले अल्लाहको कृपा हो।

وَحُشِرَ لِسُلَيْمَٰنَ جُنُودُهُۥ مِنَ ٱلْجِنِّ وَٱلْإِنسِ وَٱلطَّيْرِ فَهُمْ يُوزَعُونَ ﴿١٧﴾

१७) "सुलैमानका" सामु उनका सबै फौज जिन्न र मनुष्य र पंक्षीहरूबाट

एकत्र गरिए र उनीहरूको किसिम अनुसार दर्जा निर्धरित गरिएको थियो ।

حَتّٰۤى اِذَاۤ اَتَوْا عَلٰى وَادِ النَّمْلِ ۙ قَالَتْ نَمْلَةٌ يّٰۤاَيُّهَا
النَّمْلُ ادْخُلُوْا مَسٰكِنَكُمْ ۚ لَا يَحْطِمَنَّكُمْ سُلَيْمٰنُ
وَجُنُوْدُهٗ ۙ وَهُمْ لَا يَشْعُرُوْنَ ﴿١٨﴾

१८) जब उनी कमिलाहरूको बैंसीमा पुगे त एउटा कमिलाले भन्यो: कि हे कमिलाहरू आ-आफ्नो दूलोहरूमा प्रवेश गरिहाल, यस्तो नहोस् कि “सुलैमान” र उसको फौजले तिमीहरूलाई कुल्चिहालुन् र उनीलाई थाहा पनि नहोस् ।

فَتَبَسَّمَ ضَاحِكًا مِّنْ قَوْلِهَا وَقَالَ رَبِّ اَوْزِعْنِیْۤ
اَنْ اَشْكُرَ نِعْمَتَكَ الَّتِیْۤ اَنْعَمْتَ عَلَیَّ وَعَلٰى
وَالِدَیَّ وَاَنْ اَعْمَلَ صَالِحًا تَرْضٰىهُ وَاَدْخِلْنِیْ
بِرَحْمَتِكَ فِیْ عِبَادِكَ الصّٰلِحِیْنَ ﴿١٩﴾

१९) उनको यस कुरामा उनी(सुलैमान) हाँसिहाले र भन्न थाले: कि हे पालनकर्ता ! मलाई शक्ति देऊ जुन कृपा तिमी ममाथि र मेरा आमा बाबुमाथि गरेका छौ, त्यसप्रति कृतज्ञाता ज्ञापन गरूँ र यस्ता असल काम गरूँ कि त्यसबाट तिमी प्रसन्न भइहाल र मलाई आफ्नो कृपाले आफ्नो असल दासहरूमा प्रवेश गराइहाल ।

وَتَفَقَّدَ الطَّیْرَ فَقَالَ مَا لِیَ لَاۤ اَرَى الْهُدْهُدَ ۖ اَمْ
كَانَ مِنَ الْغَآىِٕبِیْنَ ﴿٢٠﴾

२०) उनले पंक्षीहरूको जाँचपडताल गरे, तब भन्नाथाले के कारण छ, कि म “हुदहुद” चरालाई देख्दिन, के वास्तवमा त्यो यहाँ छैन ?

لَاُعَذِّبَنَّهٗ عَذَابًا شَدِیْدًا اَوْ لَاَا۠ذْبَحَنَّهٗۤ اَوْ لَیَاْتِیَنِّیْ
بِسُلْطٰنٍ مُّبِیْنٍ ﴿٢١﴾

२१) निश्चित रूपले मैले उसलाई कठोर दण्ड दिनेछु वा त्यसलाई जब्ह गरिहाल्नेछु वा मेरो अगाडि (अनुपस्थितिको) कुनै स्पष्ट कारण प्रस्तुत गरोस् ।

فَمَكَثَ غَيْرَ بَعِيدٍ فَقَالَ أَحَطتُ بِمَا لَمْ تُحِطْ بِهِ وَجِئْتُكَ مِن سَبَإٍ بِنَبَإٍ يَقِينٍ ﴿٢٢﴾

२२) केही समय मात्र बितेको थियो, कि "हुदहुद" आइपुग्यो र भन्नथाल्यो: कि मलाई एउटा यस्तो कुरो थाहा भएछ, जुन तपाईलाई थाहा छैन । म "सबा" (शहरबाट) तपाईको पासमा एउटा विश्वासनीय सूचना लिएर आएको छु ।

إِنِّي وَجَدتُّ امْرَأَةً تَمْلِكُهُمْ وَأُوتِيَتْ مِن كُلِّ شَيْءٍ وَلَهَا عَرْشٌ عَظِيمٌ ﴿٢٣﴾

२३) मैले एउटी यस्ती स्त्रीलाई देखें जो मानिसहरूमाथि शासन गर्छे । र उसलाई हरेक कुराबाट केही न केही प्राप्त छ र उसको सिंहासन पनि बडो गरिमामय छ ।

وَجَدتُّهَا وَقَوْمَهَا يَسْجُدُونَ لِلشَّمْسِ مِن دُونِ اللَّهِ وَزَيَّنَ لَهُمُ الشَّيْطَانُ أَعْمَالَهُمْ فَصَدَّهُمْ عَنِ السَّبِيلِ فَهُمْ لَا يَهْتَدُونَ ﴿٢٤﴾

२४) मैले देखेको छु, कि उसले र उसको जातिबन्धुहरूले अल्लाहलाई छाडि सूर्यलाई ढोग्ने गर्दछन्, र शैतानले उनीहरूका कर्महरूलाई उनीहरूको लागि राम्रो बनाइदिएको छ र उनीहरूलाई सत्य मार्गबाट विचलित गरिराखेको छ । अत: उनीहरू सीधा मार्ग पाइराखेका छैनन् ।

أَلَّا يَسْجُدُوا لِلَّهِ الَّذِي يُخْرِجُ الْخَبْءَ فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَيَعْلَمُ مَا تُخْفُونَ وَمَا تُعْلِنُونَ ﴿٢٥﴾

२५) कि अल्लाहलाई नै ढोग्ने गरुन् जो अकाशहरू र धरतीमा लुकेको कुराहरूलाई प्रकट गर्दछ र तिम्रो अदृश्य र प्रकट कर्महरू जान्दछ ।

اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ رَبُّ الْعَرْشِ الْعَظِيمِ ۩ ﴿٢٦﴾

२६) अल्लाह बाहेक कोही पूजाको योग्य छैन, उही नै सर्वोच्च सत्तासन (अर्श) को स्वामी हो ।

قَالَ سَنَنظُرُ أَصَدَقْتَ أَمْ كُنتَ مِنَ الْكَاذِبِينَ ﴿٢٧﴾

२७) सुलैमानले भने: अब हामी हेर्ने छौं

कि तिमीले सच भनेका छौ वा तिमी भूठा हौ ।

اِذْهَبْ بِّكِتٰبِيْ هٰذَا فَاَلْقِهْ اِلَيْهِمْ ثُمَّ تَوَلَّ عَنْهُمْ فَانْظُرْ مَاذَا يَرْجِعُوْنَ ﴿٢٨﴾

२८) मेरो यो पत्र लिएर जाऊ र यसलाई उनीहरूको अगाडि प्रस्तुत गरिदेऊ अनि उनीहरूबाट अलग भएर हेर, कि उनीहरूले के जवाफ (प्रतिक्रिया) दिन्छन् ।

قَالَتْ يٰۤاَيُّهَا الْمَلَؤُا اِنِّيْۤ اُلْقِيَ اِلَيَّ كِتٰبٌ كَرِيْمٌ ﴿٢٩﴾

२९) उसले (रानीले) भनिन् कि हे दरबारबारीहरू ! मलाई एउटा प्रतिष्ठित पत्र पठाइएको छ ।

اِنَّهٗ مِنْ سُلَيْمٰنَ وَاِنَّهٗ بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ ﴿٣٠﴾

३०) त्यो सुलैमानको तर्फबाट आएको छ र त्यो क्षमा दिने अल्लाहको नामबाट शुरु हुन्छ जो बडो कृपाशील, तथा अत्यन्त दयावान छ ।

اَلَّا تَعْلُوْا عَلَيَّ وَاْتُوْنِيْ مُسْلِمِيْنَ ﴿٣١﴾

३१) कि म सित अट्टेरिपना नगर र आज्ञाकारी बनी मेरो पासमा आऊ ।

قَالَتْ يٰۤاَيُّهَا الْمَلَؤُا اَفْتُوْنِيْ فِيْۤ اَمْرِيْ مَا كُنْتُ قَاطِعَةً اَمْرًا حَتّٰى تَشْهَدُوْنِ ﴿٣٢﴾

३२) उसले भनी कि हे सरदारहरू ! मेरो कुराहरूमा मलाई परामर्श देऊ । म कुनै कुराको निर्णय गर्दिन जबसम्म तिमीहरूको सल्लाह र उपस्थिति हुँदैन ।

قَالُوْا نَحْنُ اُولُوْا قُوَّةٍ وَّاُولُوْا بَاْسٍ شَدِيْدٍ ۙ وَّالْاَمْرُ اِلَيْكِ فَانْظُرِيْ مَاذَا تَاْمُرِيْنَ ﴿٣٣﴾

३३) उनीहरू सबैले भनेः कि हामी सक्षम र शक्तिशाली छौं र हामीलाई ठूलो युद्धक्षमता प्राप्त छ । आदेश दिनु तपाईको अधिकारमा छ, अतः तपाईले विचार गर्नुस् कि तपाईले के आदेश दिनु हुनेछ ।

قَالَتْ إِنَّ الْمُلُوكَ إِذَا دَخَلُوا قَرْيَةً أَفْسَدُوهَا وَجَعَلُوا أَعِزَّةَ أَهْلِهَا أَذِلَّةً ۖ وَكَذَٰلِكَ يَفْعَلُونَ ﴿٣٤﴾

३४) उसले भनी कि सम्राट जब कुनै बस्तीमा प्रवेश गर्दछन् तब त्यसलाई नष्ट गरिदिन्छन् र त्यहाँका प्रभावशाली व्यक्तिहरूलाई अपमानित गरेर छाड्छन् । र यिनीहरूले पनि यस्तै नै गर्नेछन् ।

وَإِنِّي مُرْسِلَةٌ إِلَيْهِم بِهَدِيَّةٍ فَنَاظِرَةٌ بِمَ يَرْجِعُ الْمُرْسَلُونَ ﴿٣٥﴾

३५) मैले उनीहरू तिर एउटा उपहार पठाउँदैछु, अनि हेर्नेछु कि दूतले के उत्तर लिएर फर्कन्छ ।

فَلَمَّا جَاءَ سُلَيْمَانَ قَالَ أَتُمِدُّونَنِ بِمَالٍ فَمَا آتَانِيَ اللَّهُ خَيْرٌ مِّمَّا آتَاكُم بَلْ أَنتُم بِهَدِيَّتِكُمْ تَفْرَحُونَ ﴿٣٦﴾

३६) जब पत्रबाहक सुलैमान कहां पुग्यो, तब (सुलैमानले) भनेः के तिमीले मलाई धनबाट मद्दत गर्न चाहन्छौ, जे-जति अल्लाहले मलाई प्रदान गरेको छ, त्यो ऊ सबभन्दा राम्रो छ, जुन कि तिमीलाई दिएको छ । त्यसकारण तिमी पनि आफ्नो उपहारबाट खुशी भइराख ।

ارْجِعْ إِلَيْهِمْ فَلَنَأْتِيَنَّهُم بِجُنُودٍ لَّا قِبَلَ لَهُم بِهَا وَلَنُخْرِجَنَّهُم مِّنْهَا أَذِلَّةً وَهُمْ صَاغِرُونَ ﴿٣٧﴾

३७) तिनीहरूको पासमा फर्केर जाऊ, हामीले उनीहरूको विरोधमा यस्तो सेना लिएर आउने छौं, जसको उनीहरूले सामना गर्न सक्ने छैनन् र हामीले उनीहरूलाई अपमानित गरेर निकालिदिनेछौं र तिनीहरू तिरस्कृत हुनेछन् ।

قَالَ يَا أَيُّهَا الْمَلَأُ أَيُّكُمْ يَأْتِينِي بِعَرْشِهَا قَبْلَ أَن يَأْتُونِي مُسْلِمِينَ ﴿٣٨﴾

३८) (सुलैमानले) भनेः कि हे दरबारवालाहरू ! तिमीहरूमध्ये कसले उसको सिंहासन लिएर मेरो पासमा आउँन सक्छ, यसभन्दा

अगाडि कि तिनीहरू आज्ञाकारी भई मेरो पासमा आउन् ।

قَالَ عِفْرِيْتٌ مِّنَ الْجِنِّ اَنَا اٰتِيْكَ بِهٖ قَبْلَ اَنْ تَقُوْمَ
مِنْ مَّقَامِكَ ۚ وَاِنِّيْ عَلَيْهِ لَقَوِيٌّ اَمِيْنٌ ﴿٣٩﴾

३९) जिन्नहरू मध्ये एउटा बलिष्टले भन्यो: कि तपाईले यस बैठकबाट उठ्नु भन्दा पहिला नै म तपाईको अगाडि ल्याई दिनेछु । मलाई यसको शक्ति प्राप्त छ, र म विश्वसनीय पनि हूँ ।

قَالَ الَّذِيْ عِنْدَهٗ عِلْمٌ مِّنَ الْكِتٰبِ اَنَا اٰتِيْكَ
بِهٖ قَبْلَ اَنْ يَّرْتَدَّ اِلَيْكَ طَرْفُكَ ۗ فَلَمَّا رَاٰهُ
مُسْتَقِرًّا عِنْدَهٗ قَالَ هٰذَا مِنْ فَضْلِ رَبِّيْ ۖ
لِيَبْلُوَنِيْٓ ءَاَشْكُرُ اَمْ اَكْفُرُ ۗ وَمَنْ شَكَرَ فَاِنَّمَا
يَشْكُرُ لِنَفْسِهٖ ۚ وَمَنْ كَفَرَ فَاِنَّ رَبِّيْ غَنِيٌّ
كَرِيْمٌ ﴿٤٠﴾

४०) एउटा व्यक्तिले जसलाई किताबको ज्ञान थियो, भन्न थाल्यो कि म तपाईले आँखा चिम गर्नुभन्दा पहिले तपाईको पासमा पु-याउन सक्दछु । जब उहाँले सिंहासन आफ्नो पासमा राखिएको देख्नु भयो त भने कि यो मेरो पालनकर्ताको उदार अनुग्रह हो, ताकि उसले मेरो परीक्षा लेओस् कि म कृतज्ञता व्यक्त गर्छु वा कृतघ्न बन्दछु । जसले कृतज्ञता देखाउँछ उसले आफ्नै लागि कृतज्ञता देखाउँछ र जसले कृतघ्नता देखायो, त मेरो पालनकर्ता निश्चय नै निस्पृह (र) उदारकर्ता छ ।

قَالَ نَكِّرُوْا لَهَا عَرْشَهَا نَنْظُرْ اَتَهْتَدِيْٓ اَمْ تَكُوْنُ
مِنَ الَّذِيْنَ لَا يَهْتَدُوْنَ ﴿٤١﴾

४१) (सुलैमानले) भने: कि यस सिंहासनमा केही परिवर्तन गर जसबाट यो थाहा होस् कि उसले बाटो (सच्चा बाटो) पाउँछे वा सही बाटो नपाउनेहरूको समूह मध्येको हुनेछे ।

فَلَمَّا جَآءَتْ قِيْلَ اَهٰكَذَا عَرْشُكِ ۗ قَالَتْ
كَاَنَّهٗ هُوَ ۚ وَاُوْتِيْنَا الْعِلْمَ مِنْ قَبْلِهَا وَكُنَّا
مُسْلِمِيْنَ ﴿٤٢﴾

४२) अनि जब त्यो आइपुगी त ऊ सित भनियो: कि के तिम्रा सिंहासन पनि यस्तै छ ? उसले जवाफ दिई कि

यो त त्यहि जस्तो लाग्छ र मलाई त यसभन्दा अगाडि नै ज्ञान प्राप्त भइसकेको थियो र म आज्ञाकारी भइसकेको थिएँ ।

४३) र अल्लाह बाहेक जसलाई पूजा गर्दथी तिनले उनलाई रोकी राखेका थिए । नि:सन्देह त्यो एउटा इन्कार गर्नेवाला समूह मध्येकी थिई ।

وَصَدَّهَا مَا كَانَت تَّعْبُدُ مِن دُونِ اللَّهِ ۖ إِنَّهَا
كَانَتْ مِن قَوْمٍ كَافِرِينَ ﴿٤٣﴾

४४) अनि उसित भनियो: कि महलमा प्रवेश गर । जब उसले त्यसको (फर्श) लाई देख्यो, तब उसले त्यसलाई पानीको हौज ठान्यों र आफ्नो पिडौला देखाइहाल्यो । सुलैमान (अलै) ले भने यो त शिशाबाट निर्मित महल हो । त्यसले भनी कि हे मेरो पालनकर्ता ! निश्चय नै मैले आफूमाथि अत्याचार गरें । अब मैले सुलैमान (अलै)को साथमा आफूलाई अल्लाहमा समर्पित गरिदिएं, जो सम्पूर्ण जगत्को पालनकर्ता हो ।

قِيلَ لَهَا ادْخُلِي الصَّرْحَ ۖ فَلَمَّا رَأَتْهُ حَسِبَتْهُ
لُجَّةً وَكَشَفَتْ عَن سَاقَيْهَا ۚ قَالَ إِنَّهُ صَرْحٌ
مُّمَرَّدٌ مِّن قَوَارِيرَ ۗ قَالَتْ رَبِّ إِنِّي ظَلَمْتُ نَفْسِي
وَأَسْلَمْتُ مَعَ سُلَيْمَانَ لِلَّهِ رَبِّ الْعَالَمِينَ ﴿٤٤﴾

४५) र हामीले “समूदतिर” उसको भाइ “सालेहलाई” पठायौं, कि तिमी सबै अल्लाहको पूजा गर तर तिनीहरू दुई समूहमा विभाजित भई आपसमा झगडा गर्न थाले ।

وَلَقَدْ أَرْسَلْنَا إِلَىٰ ثَمُودَ أَخَاهُمْ صَالِحًا أَنِ
اعْبُدُوا اللَّهَ فَإِذَا هُمْ فَرِيقَانِ يَخْتَصِمُونَ ﴿٤٥﴾

४६) (सालेहले) भने: कि हे मेरो जाति बन्धुका मानिसहरू ! तिमी भलाई भन्दा अगाडि नराम्रो तिर किन

قَالَ يَا قَوْمِ لِمَ تَسْتَعْجِلُونَ بِالسَّيِّئَةِ قَبْلَ
الْحَسَنَةِ ۖ لَوْلَا تَسْتَغْفِرُونَ اللَّهَ لَعَلَّكُمْ
تُرْحَمُونَ ﴿٤٦﴾

शीघ्रता देखाइराखेका छौ ? र तिमी अल्लाहसित क्षमा किन माग्दैनौं, ताकि तिमीमाथि दया गरियोस् ।

قَالُوا اطَّيَّرْنَا بِكَ وَبِمَن مَّعَكَ ۚ قَالَ طَائِرُكُمْ عِندَ اللَّهِ ۖ بَلْ أَنتُمْ قَوْمٌ تُفْتَنُونَ ﴿٤٧﴾

४७) उनीहरूले भन्नथाले: कि हामी त तिमी र तिम्रा साथीहरूलाई हाम्रो लागि अपशगुन देखी राखेका छौं । (सालेहले) भने: कि तिम्रो अपशगुन अल्लाहको नजिक छ, बरु तिमीहरू त सजायमा परी सकेका मानिसहरू हौ ।

وَكَانَ فِي الْمَدِينَةِ تِسْعَةُ رَهْطٍ يُفْسِدُونَ فِي الْأَرْضِ وَلَا يُصْلِحُونَ ﴿٤٨﴾

४८) र यस शहरमा नौं जना जथ्थेदार मानिस थिए, जसले देशमा उपद्रव गर्ने गर्दथे र सुधार गर्दैनथे ।

قَالُوا تَقَاسَمُوا بِاللَّهِ لَنُبَيِّتَنَّهُ وَأَهْلَهُ ثُمَّ لَنَقُولَنَّ لِوَلِيِّهِ مَا شَهِدْنَا مَهْلِكَ أَهْلِهِ وَإِنَّا لَصَادِقُونَ ﴿٤٩﴾

४९) उनीहरूले आपसमा शपथ खाई खाइकन प्रतीज्ञा गरे, कि रातीमा नै हामी सालेह र उसको घरवालाहरूमाथि छापा मार्ने छौं, अनि उसका उत्तराधिकारीहरूसित भन्ने छौं कि हामी त उसको घरवालाहरूको विनाश हुने ठाउँमा जाँदै गएनौ, र हामी सत्य कुरा भन्दछौं ।

وَمَكَرُوا مَكْرًا وَمَكَرْنَا مَكْرًا وَهُمْ لَا يَشْعُرُونَ ﴿٥٠﴾

५०) र उनीहरूले एउटा गुप्त चाल चले र हामीले पनि एउटा चाल चल्यौं तर उनीहरूलाई थाहै भएन ।

فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ مَكْرِهِمْ أَنَّا دَمَّرْنَاهُمْ وَقَوْمَهُمْ أَجْمَعِينَ ﴿٥١﴾

५१) तसर्थ अब हेरी हाल: उनीहरूको धोकाको परिणाम कस्तो भयो । हामीले उनीहरूलाई र उनको जाति समुदाय सबैलाई नष्ट पारिहाल्यौ ।

فَتِلْكَ بُيُوتُهُمْ خَاوِيَةًۢ بِمَا ظَلَمُوا۟ ۗ إِنَّ فِى ذَٰلِكَ لَءَايَةً لِّقَوْمٍ يَعْلَمُونَ ﴿٥٢﴾

५२) यी उनका घरहरू हुन् जो उनीहरूको अत्याचारको कारणले रिक्त भएका छन् । जुन मानिसहरू ज्ञानीछन्, उनीहरूका निम्ति यसमा ठूलो निशानी छ ।

وَأَنجَيْنَا ٱلَّذِينَ ءَامَنُوا۟ وَكَانُوا۟ يَتَّقُونَ ﴿٥٣﴾

५३) र हामीले उनीहरूलाई जसले ईमान ल्याएका थिए र संयमी थिए बचाई हाल्यौ ।

وَلُوطًا إِذْ قَالَ لِقَوْمِهِۦٓ أَتَأْتُونَ ٱلْفَٰحِشَةَ وَأَنتُمْ تُبْصِرُونَ ﴿٥٤﴾

५४) र "लूतलाई" पनि पठायौं, जब उनले आफ्नो समुदायसित भने: कि तिमीहरू जानी बुझी किन व्यभिचार गर्दछौ ।

أَئِنَّكُمْ لَتَأْتُونَ ٱلرِّجَالَ شَهْوَةً مِّن دُونِ ٱلنِّسَآءِ ۚ بَلْ أَنتُمْ قَوْمٌ تَجْهَلُونَ ﴿٥٥﴾

५५) यो के कुरा छ के तिमी स्त्रीहरूलाई छाडी आफ्नो वासना तृप्तिको निम्ति पुरुषहरूको पासमा जान्छौ ? बरु साँचो यो छ कि तिमीहरू साह्रै अज्ञानी काम गर्दैछौ ।

فَمَا كَانَ جَوَابَ قَوْمِهِۦٓ إِلَّآ أَن قَالُوٓا۟ أَخْرِجُوٓا۟ ءَالَ لُوطٍ مِّن قَرْيَتِكُمْ ۖ إِنَّهُمْ أُنَاسٌ يَتَطَهَّرُونَ ﴿٥٦﴾

५६) अनि उनको जातिका मानिसहरूको उत्तर यस बाहेक अरु केही थिएन कि उनीहरूले भने: लूतका घरवालाहरूलाई आफ्नो बस्तीबाट बाहिर निकालिदेऊ । यिनीहरू त धेरै पवित्र बन्न चाहन्छन् ।

فَأَنجَيْنَٰهُ وَأَهْلَهُۥٓ إِلَّا ٱمْرَأَتَهُۥ قَدَّرْنَٰهَا مِنَ ٱلْغَٰبِرِينَ ﴿٥٧﴾

५७) अन्ततः हामीले उनलाई र उनका घरवालाहरूलाई, बचाइहाल्यौ उसकी स्त्री बाहेक, जसको लागि हामीले नियत गरिदिएका थियौ कि, ऊ पछि पर्नेहरू मध्ये हुनेछे ।

وَ اَمۡطَرۡنَا عَلَیۡهِمۡ مَّطَرًا ۚ فَسَآءَ مَطَرُ الۡمُنۡذَرِیۡنَ ﴿۵۸﴾

५८) र हामीले उनीमाथि एउटा (विशेष खालको) वर्षा वर्षायौ र त्यो सचेत गरिसकिएको लागि साह्रै नराम्रो वर्षा थियो ।

قُلِ الۡحَمۡدُ لِلّٰهِ وَ سَلٰمٌ عَلٰی عِبَادِهِ الَّذِیۡنَ اصۡطَفٰی ؕ آٰللّٰهُ خَیۡرٌ اَمَّا یُشۡرِکُوۡنَ ﴿۵۹﴾

५९) तपाई भनिदिनुस् कि सबै प्रशंसा अल्लाहको लागि छ र उसका खास भक्तहरूमाथि सलाम, शान्ति छ, जसलाई उसले रोजिहाल्यौ । के अल्लाह राम्रो छ, वा उनीहरू जसलाई तिनीहरूले साझेदार ठहराइराखेकाछन् ?

اَمَّنۡ خَلَقَ السَّمٰوٰتِ وَ الۡاَرۡضَ وَ اَنۡزَلَ لَکُمۡ مِّنَ السَّمَآءِ مَآءً ۚ فَاَنۡۢبَتۡنَا بِهٖ حَدَآئِقَ ذَاتَ بَهۡجَةٍ ۚ مَا کَانَ لَکُمۡ اَنۡ تُنۡۢبِتُوۡا شَجَرَهَا ؕ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ؕ بَلۡ هُمۡ قَوۡمٌ یَّعۡدِلُوۡنَ ﴿۶۰﴾

६०) भन त आकाशहरू र धरतीलाई कसले सृष्टि गऱ्यो, र कसले आकाशबाट पानी वर्षायो, फेरि त्यसबाट हराभरा बगैचाको सृष्टि गऱ्यो, यो बगैचाका वृक्षहरू उमार्नु तिम्रो लागि सम्भव थिएन । के अल्लाहको साथमा कोही अरु पूज्य छ ? होइन, बरु तिनीहरू नै सत्यमार्गबाट टाढिँदैछन् ।

اَمَّنۡ جَعَلَ الۡاَرۡضَ قَرَارًا وَّ جَعَلَ خِلٰلَهَاۤ اَنۡهٰرًا وَّ جَعَلَ لَهَا رَوَاسِیَ وَ جَعَلَ بَیۡنَ الۡبَحۡرَیۡنِ حَاجِزًا ؕ ءَاِلٰهٌ مَّعَ اللّٰهِ ؕ بَلۡ اَکۡثَرُهُمۡ لَا یَعۡلَمُوۡنَ ﴿۶۱﴾

६१) कसले धरतीलाई स्थिर गरेर बस्ने ठाउँ बनायो, र उसको बीचमा नहरहरू बगायो, र उसको लागि पहाडहरूको सृष्टि गऱ्यो र (जसले) दुई समुन्द्रहरूको बीचमा तगारो बनायो ? त के अल्लाहको साथमा अरु कोही पूज्य पनि छ ? बरु तिनीहरूमध्ये धेरैले केही बुझ्दैनन् ।

أَمَّنْ يُجِيبُ الْمُضْطَرَّ إِذَا دَعَاهُ وَيَكْشِفُ السُّوءَ وَيَجْعَلُكُمْ خُلَفَاءَ الْأَرْضِ ۗ أَإِلَٰهٌ مَعَ اللَّهِ ۚ قَلِيلًا مَا تَذَكَّرُونَ ﴿٦٢﴾

६२) कसले व्यग्रको गुहार सुन्दछ, जब त्यसले उसलाई गुहार्दछ र व्यथा हटाइदिन्छ र तिमीलाई धरतीमा शासक बनाउँदछ ? के अल्लाहको साथमा अरु कोही पूजनीय छ ? (होइन) तिमीहरूले धेरै कम नसीहत र शिक्षा हासिल गर्दछौ ।

أَمَّنْ يَهْدِيكُمْ فِي ظُلُمَاتِ الْبَرِّ وَالْبَحْرِ وَمَنْ يُرْسِلُ الرِّيَاحَ بُشْرًا بَيْنَ يَدَيْ رَحْمَتِهِ ۗ أَإِلَٰهٌ مَعَ اللَّهِ ۚ تَعَالَى اللَّهُ عَمَّا يُشْرِكُونَ ﴿٦٣﴾

६३) कसले तिमीलाई जङ्गल र समुद्रको अँध्यारोमा बाटो देखाउँछ र हावाहरूलाई आफ्नो दया गर्नु भन्दा अगाड़ि शुभ सन्देश दिन चलाउँछ ? अनि के अल्लाहको साथमा अरु कोही पूजनीय पनि छ जसलाई यिनीहरूले साझेदार बनाउँछन् ? अल्लाह उच्च र महान छ ।

أَمَّنْ يَبْدَأُ الْخَلْقَ ثُمَّ يُعِيدُهُ وَمَنْ يَرْزُقُكُمْ مِنَ السَّمَاءِ وَالْأَرْضِ ۗ أَإِلَٰهٌ مَعَ اللَّهِ ۚ قُلْ هَاتُوا بُرْهَانَكُمْ إِنْ كُنْتُمْ صَادِقِينَ ﴿٦٤﴾

६४) को हो जसले पहिलो प्राणीहरूको सृष्टि गर्दछ, अनि उसको पुनरावृत्ति गर्नेछ र को हो जसले तिमीलाई आकाश र धरतीबाट जीविका प्रदान गर्दैछ, त के अल्लाहको साथमा अरु कोही पूज्य छ ? (होइन) भनिदिनुस् कि यदि तिमी साँचो हौ भने प्रमाण पेश गर ।

قُلْ لَا يَعْلَمُ مَنْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ الْغَيْبَ إِلَّا اللَّهُ ۚ وَمَا يَشْعُرُونَ أَيَّانَ يُبْعَثُونَ ﴿٦٥﴾

६५) भनिदिनुस् कि जो आकाशहरू र धरतीमा छन्, अल्लाह बाहेक कोही अन्तरयामी छैन उनीहरू त यो पनि जान्दैनन् कि कहिले उठाइनेछन् ।

بَلِ ادَّارَكَ عِلْمُهُمْ فِي الْآخِرَةِ ۚ بَلْ هُمْ فِي شَكٍّ مِنْهَا ۖ بَلْ هُمْ مِنْهَا عَمُونَ ﴿٦٦﴾

६६) बरु आख़िरतको विषयमा उनको ज्ञानको अन्त्य भइसकेको छ । बरु

यिनीहरू यसबाट सन्देहमा छन्, बरु उनीहरू यसबाट अन्धा छन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْٓا ءَاِذَا كُنَّا تُرٰبًا وَّاٰبَآؤُنَآ اَئِنَّا لَمُخْرَجُوْنَ ﴿٦٧﴾

६७) काफिरहरूले भने: कि के जब हामी, र हाम्रो बाबुबाजे माटो भइहाल्छौं, तब के फेरि हामी (चिहानबाट) निकालिने छौं ?

لَقَدْ وُعِدْنَا هٰذَا نَحْنُ وَاٰبَآؤُنَا مِنْ قَبْلُ ۙ اِنْ هٰذَآ اِلَّآ اَسَاطِيْرُ الْاَوَّلِيْنَ ﴿٦٨﴾

६८) यो वाचा हामीसित र हाम्रा बाबु बाजेसित त धेरै पहिला देखि नै भइराखेको छ । यो त पूर्वजहरूका कथा मात्र हुन् ।

قُلْ سِيْرُوْا فِي الْاَرْضِ فَانْظُرُوْا كَيْفَ كَانَ عَاقِبَةُ الْمُجْرِمِيْنَ ﴿٦٩﴾

६९) भनिदिनुस्: कि धरतीमा घुमफिर त गरेर हेर कि अपराधीहरूको परिणाम कस्तो भयो ?

وَلَا تَحْزَنْ عَلَيْهِمْ وَلَا تَكُنْ فِيْ ضَيْقٍ مِّمَّا يَمْكُرُوْنَ ﴿٧٠﴾

७०) तपाई उनीहरूका लागि दु:खी नहुनुस् र उनीहरूको दाउ घातहरूबाट पनि दु:खी नहुनुस् ।

وَيَقُوْلُوْنَ مَتٰى هٰذَا الْوَعْدُ اِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٧١﴾

७१) र भन्दछन्: कि यदि सत्य हौ भने, त यो वाचा कहिले पूरा हुनेछ बताई दिनुस् ?

قُلْ عَسٰٓى اَنْ يَّكُوْنَ رَدِفَ لَكُمْ بَعْضُ الَّذِيْ تَسْتَعْجِلُوْنَ ﴿٧٢﴾

७२) जवाफ दिनुस् ! कि जुन कुराहरू (यातना) को निम्ति तिमीले शीघ्रता गरिराखेका छौ, शायद त्यस मध्येबाट केही तिम्रो नजिकमा आई सकेका छन् ।

وَاِنَّ رَبَّكَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَشْكُرُوْنَ ﴿٧٣﴾

७३) नि:सन्देह तपाईको पालनकर्ता त मानिसहरूमाथि ठूलो दया गर्नेवाला छ, तर यिनीहरूमध्ये धेरैले कृतज्ञता व्यक्त गर्दैनन् ।

وَإِنَّ رَبَّكَ لَيَعْلَمُ مَا تُكِنُّ صُدُورُهُمْ وَمَا يُعْلِنُونَ ﴿٧٤﴾

७४) र निःसन्देह जुन कुराहरू उनको छातीमा लुकेको हुन्छ र जुन काम उनीहरूले प्रकट गर्दछन्, तपाईको पालनकर्ताले ती (सबै) जान्दछ ।

وَمَا مِنْ غَائِبَةٍ فِي السَّمَاءِ وَالْأَرْضِ إِلَّا فِي كِتَابٍ مُبِينٍ ﴿٧٥﴾

७५) आकाशहरू र धरतीमा लुकेको कुनै पनि यस्तो कुरा छैन जुन स्पष्ट र खुल्ला किताबमा मौजूद नहोस् ।

إِنَّ هَٰذَا الْقُرْآنَ يَقُصُّ عَلَىٰ بَنِي إِسْرَائِيلَ أَكْثَرَ الَّذِي هُمْ فِيهِ يَخْتَلِفُونَ ﴿٧٦﴾

७६) निःसन्देह यो कुरआनले बनी इस्राईलको अगाडि ती धेरै कुराहरू, जसमा उनीहरूले विवाद गर्दछन्, स्पष्ट रूपमा बयान गर्दछ ।

وَإِنَّهُ لَهُدًى وَرَحْمَةٌ لِلْمُؤْمِنِينَ ﴿٧٧﴾

७७) र निःसन्देह यो कुरआन ईमानवालाहरूको निम्ति मार्गदर्शन र कृपा हो ।

إِنَّ رَبَّكَ يَقْضِي بَيْنَهُمْ بِحُكْمِهِ ۚ وَهُوَ الْعَزِيزُ الْعَلِيمُ ﴿٧٨﴾

७८) तपाईको पालनकर्ताले उनीहरू बीच आफ्नो आदेशले सबै फैसला गरिदिनेछ । ऊ सर्वशक्ति सम्पन्न र सर्वज्ञ छ ।

فَتَوَكَّلْ عَلَى اللَّهِ ۖ إِنَّكَ عَلَى الْحَقِّ الْمُبِينِ ﴿٧٩﴾

७९) तसर्थ तपाईले अल्लाहमा भरोसा राख्नुस् । निश्चित रूपले तपाई त स्पष्ट र खुल्ला धर्ममा हुनुहुन्छ ।

إِنَّكَ لَا تُسْمِعُ الْمَوْتَىٰ وَلَا تُسْمِعُ الصُّمَّ الدُّعَاءَ إِذَا وَلَّوْا مُدْبِرِينَ ﴿٨٠﴾

८०) निःसन्देह तपाईले न मुर्दाहरूलाई सुनाउन सक्नुहुन्छ र न बहिराहरूलाई आफ्ना आवाज सुनाउन सक्नुहुन्छ, जब कि उनीहरू पिठ्यू फर्काई विमुख भएर गइरहेका छन् ।

وَمَا أَنْتَ بِهَادِي الْعُمْيِ عَنْ ضَلَالَتِهِمْ ۖ

८१) र न त तपाईले अन्धालाई उनको

إِن تُسْمِعُ إِلَّا مَن يُؤْمِنُ بِآيَاتِنَا فَهُم مُّسْلِمُونَ ﴿٨١﴾

मार्ग विचलनबाट हटाएर सही बाटो देखाउन सक्नुहुन्छ । तपाईले त उनीहरूलाई मात्र सुनाउन सक्नुहुन्छ जसले हाम्रो आयतहरूमाथि आस्था राख्दछन् र आज्ञाकारी छन् ।

وَإِذَا وَقَعَ الْقَوْلُ عَلَيْهِمْ أَخْرَجْنَا لَهُمْ دَابَّةً مِّنَ الْأَرْضِ تُكَلِّمُهُمْ أَنَّ النَّاسَ كَانُوا بِآيَاتِنَا لَا يُوقِنُونَ ﴿٨٢﴾

८२) जब उनीहरूका लागि यातनाको वाचा पूरा हुनेछ, तब हामीले उनीहरूको लागि धरतीबाट एउटा जनावर निकाल्नेछौं, जसले उनीहरूसित कुरा गर्नेछ, कि मानिसहरू हाम्रो आयतहरूमा विश्वास गर्दैनथे ।

وَيَوْمَ نَحْشُرُ مِن كُلِّ أُمَّةٍ فَوْجًا مِّمَّن يُكَذِّبُ بِآيَاتِنَا فَهُمْ يُوزَعُونَ ﴿٨٣﴾

८३) र जुन दिन हामी प्रत्येक समूह मध्येबाट त्यस समूहलाई एकत्रित गर्नेछौं, जसले हाम्रा आयतहरूलाई असत्य भन्दथे, अनि उनीहरूलाई विभिन्न श्रेणीहरूमा विभाजित गरिनेछ ।

حَتَّىٰ إِذَا جَاءُوا قَالَ أَكَذَّبْتُم بِآيَاتِي وَلَمْ تُحِيطُوا بِهَا عِلْمًا أَمَّاذَا كُنتُمْ تَعْمَلُونَ ﴿٨٤﴾

८४) यहाँसम्म कि जब सबै आइपुग्नेछन् तब अल्लाहले आदेश गर्नेछः कि तिमीलाई पूरा ज्ञान नभएर पनि तिमीले मेरा आयतहरूलाई किन असत्य भनेका थियौ ? र यो पनि बताऊ कि तिमीले के गर्दै थियौ ?

وَوَقَعَ الْقَوْلُ عَلَيْهِم بِمَا ظَلَمُوا فَهُمْ لَا يَنطِقُونَ ﴿٨٥﴾

८५) र उनीहरूको अपराधको कारणले उनीहरूको हक़मा यातनाको वाचा पूरा भएर नै छाड्नेछ, अनि उनीहरू केही बोल्न सक्नेछैनन् ।

أَلَمْ يَرَوْا أَنَّا جَعَلْنَا اللَّيْلَ لِيَسْكُنُوا فِيهِ

८६) के उनीहरूले देखेनन् कि हामीले

रातलाई बनाएका छौं ताकि यसमा तिनीहरूले आराम गरुन्, र दिनलाई उज्यालो बनाएका छौं । र निःसन्देह यसमा त्यस समुदायहरूको लागि जो ईमान र विश्वास राख्दछन् निशानीहरू छन् ।

وَالنَّهَارَ مُبْصِرًا ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِقَوْمٍ يُؤْمِنُونَ ﴿٨٦﴾

८७) र जुन दिन सूर फूकिनेछ तब जो आकाशहरू र जो जमिनमा छन्, सबै आत्तिनेछन्, तिनी बाहेक जसलाई अल्लाह चाहन्छ । र सबै उसको समक्ष विवश र बाध्य भई उपस्थित हुनेछन् ।

وَيَوْمَ يُنْفَخُ فِي الصُّورِ فَفَزِعَ مَنْ فِي السَّمَاوَاتِ وَمَنْ فِي الْأَرْضِ إِلَّا مَنْ شَاءَ اللَّهُ ۚ وَكُلٌّ أَتَوْهُ دَاخِرِينَ ﴿٨٧﴾

८८) र जब तिमीले पहाडहरूलाई हेरेर तिनीहरूलाई आफ्नो ठाउँमा स्थिर देख्दछौ, तर तिनीहरू पनि यसप्रकार हिंड्नेछन्, जस्तो कि बादल । यो अल्लाहको कारीगरी हो, जसले प्रत्येक कुरालाई बलियो बनायो । निःसन्देह उसले तिम्रा कर्महरूको बारेमा जानकारी राख्दछ ।

وَتَرَى الْجِبَالَ تَحْسَبُهَا جَامِدَةً وَهِيَ تَمُرُّ مَرَّ السَّحَابِ ۚ صُنْعَ اللَّهِ الَّذِي أَتْقَنَ كُلَّ شَيْءٍ ۚ إِنَّهُ خَبِيرٌ بِمَا تَفْعَلُونَ ﴿٨٨﴾

८९) जुन व्यक्तिले असल कर्म लिएर आउनेछ, उसको निम्ति उसलाई त्यसभन्दा राम्रो प्रतिफल मिल्ने छ र यस्ता मानिसहरू त्यसदिनको घबराहटबाट निश्चिन्त हुनेछन् ।

مَنْ جَاءَ بِالْحَسَنَةِ فَلَهُ خَيْرٌ مِنْهَا وَهُمْ مِنْ فَزَعٍ يَوْمَئِذٍ آمِنُونَ ﴿٨٩﴾

९०) र जसले नराम्रो कर्म लिएर आउनेछन् तिनीहरूलाई घोप्ट्याएर नर्कमा धकेलिनेछ । तिमीलाई त तिनै कर्महरूको प्रतिफल प्राप्त

وَمَنْ جَاءَ بِالسَّيِّئَةِ فَكُبَّتْ وُجُوهُهُمْ فِي النَّارِ هَلْ تُجْزَوْنَ إِلَّا مَا كُنْتُمْ تَعْمَلُونَ ﴿٩٠﴾

हुनेछ, जुन तिमीले गर्दै आइरहेका छौ ।

إِنَّمَآ أُمِرْتُ أَنْ أَعْبُدَ رَبَّ هَٰذِهِ ٱلْبَلْدَةِ ٱلَّذِى حَرَّمَهَا وَلَهُۥ كُلُّ شَىْءٍ ۖ وَأُمِرْتُ أَنْ أَكُونَ مِنَ ٱلْمُسْلِمِينَ ﴿٩١﴾

९१) (भनिदिनुस्) मलाई यही नै आदेश भएको छः कि म यस "मक्का" शहरको स्वामीको उपासना गरूँ, जसले यसलाई सम्मानित र मर्यादित बनाएको छ र यी सबै कुरा उसैको अधीनमा छन् र यो पनि आदेश भएको छ कि म उसको आज्ञाकारीको रूपमा रहूँ ।

وَأَنْ أَتْلُوَا۟ ٱلْقُرْءَانَ ۖ فَمَنِ ٱهْتَدَىٰ فَإِنَّمَا يَهْتَدِى لِنَفْسِهِۦ ۖ وَمَن ضَلَّ فَقُلْ إِنَّمَآ أَنَا۠ مِنَ ٱلْمُنذِرِينَ ﴿٩٢﴾

९२) र यो पनि कि म "कुरआन" पढ्ने गरूँ, त जुन मानिसले सोझो बाटो अपनाउँछ, उसले आफ्नै फाइदाको निम्ति अपनाउँछ, र जो मार्ग विचलित हुन्छ त भनिदिनुस् कि म त मात्र सचेत गर्नेवाला हूँ ।

وَقُلِ ٱلْحَمْدُ لِلَّهِ سَيُرِيكُمْ ءَايَٰتِهِۦ فَتَعْرِفُونَهَا ۚ وَمَا رَبُّكَ بِغَٰفِلٍ عَمَّا تَعْمَلُونَ ﴿٩٣﴾

९३) भनिदिनुस् कि सम्पूर्ण प्रशंसा अल्लाहकै लागि हुन् । उसले तिमीलाई शीघ्र नै आफ्ना निशानीहरू देखाउनेछ, जसलाई तिमी आफैले चिन्हिहाल्नेछौ र जुन कर्म तिमीले गर्दैछौ, त्यसबाट तिम्रो पालनकर्ता अनभिज्ञ छैन ।



# सूरतुल् क़सस-२८



सूरतुल् क़सस मक्की हो, यसमा ८८ आयतहरू र ९ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) ता-सीन-मीम ।

طٰسٓمٓ ①

२) यी स्पष्ट किताबका आयतहरू हुन् ।

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْمُبِيْنِ ②

३) (हे मुहम्मद !) हामीले तपाई समक्ष मूसा र फिरऔनका सत्य घटनाहरू मोमिनहरूका लागि वर्णन गर्दछौं,

نَتْلُوْا عَلَيْكَ مِنْ نَّبَاِ مُوْسٰى وَفِرْعَوْنَ بِالْحَقِّ لِقَوْمٍ يُّؤْمِنُوْنَ ③

४) निःसन्देह फिरऔनले धरतीमा अट्टेरिपना गरी आएको थियो र त्यहाँका मानिसहरूलाई अनेक समूहमा विभाजन गरी एउटा समूहलाई कमजोर पारिसकेको थियो । त्यसले उनीहरूका छोराहरूलाई मारिदिन्थ्यो र उनीहरूका छोरीहरूलाई जीवित रहन दिन्थ्यो निश्चय नै त्यो उपद्रव गर्नेहरू मध्येको थियो ।

اِنَّ فِرْعَوْنَ عَلَا فِي الْاَرْضِ وَجَعَلَ اَهْلَهَا شِيَعًا يَّسْتَضْعِفُ طَآئِفَةً مِّنْهُمْ يُذَبِّحُ اَبْنَآءَهُمْ وَيَسْتَحْيٖ نِسَآءَهُمْ ؕ اِنَّهٗ كَانَ مِنَ الْمُفْسِدِيْنَ ④

५) र हामीले चाहयौं कि तिनीहरूमाथि उपकार गरौं, जसलाई धरतीमा अति कमजोर गरिएको थियो र उनीहरूलाई नै (धरतीको) नायक र उत्तराधिकारी बनाऔं ।

وَنُرِيْدُ اَنْ نَّمُنَّ عَلَى الَّذِيْنَ اسْتُضْعِفُوْا فِي الْاَرْضِ وَنَجْعَلَهُمْ اَئِمَّةً وَّنَجْعَلَهُمُ الْوٰرِثِيْنَ ⑤

६) र यो पनि कि हामीले धरतीमा उनीहरूलाई सत्ताधिकार प्रदान

وَنُمَكِّنَ لَهُمْ فِي الْاَرْضِ وَنُرِيَ فِرْعَوْنَ وَهَامٰنَ وَجُنُوْدَهُمَا مِنْهُمْ مَّا كَانُوْا يَحْذَرُوْنَ ⑥

गरौं र उनीहरूबाट फिरऔन र हामान र उनीहरूको सेनाहरूलाई ती कुरा देखाऔं, जसबाट उनीहरू डराई रहेका छन् ।

وَاَوۡحَيۡنَاۤ اِلٰٓى اُمِّ مُوۡسٰٓى اَنۡ اَرۡضِعِيۡهِ‌ ۚ فَاِذَا خِفۡتِ عَلَيۡهِ فَاَلۡقِيۡهِ فِى الۡيَمِّ وَلَا تَخَافِىۡ وَلَا تَحۡزَنِىۡ‌ ۚ اِنَّا رَآدُّوۡهُ اِلَيۡكِ وَجٰعِلُوۡهُ مِنَ الۡمُرۡسَلِيۡنَ ﴿۷﴾

७) हामीले "मूसा" (अ.) की आमालाई संकेत गऱ्यौं कि उसलाई दूध खुवाउँदै गर अनि यदि तिमीलाई उसको विषयमा कुनै भय हुन्छ भने उसलाई नदीमा हालिदिनु र तिमीले कुनै भय नमान्नु न त चिन्ता गर्नु । हामीले उसलाई तिम्रो पासमा फर्काइदिनेछौं र उसलाई पैग़म्बर बनाउने वाला छौं ।

فَالۡتَقَطَهٗۤ اٰلُ فِرۡعَوۡنَ لِيَكُوۡنَ لَهُمۡ عَدُوًّا وَّحَزَنًا ‌ؕ اِنَّ فِرۡعَوۡنَ وَهَامٰنَ وَجُنُوۡدَهُمَا كَانُوۡا خٰطِـئِيۡنَ ﴿۸﴾

८) अन्ततः फिरऔनका मानिसहरूले त्यस बच्चालाई उठाइहाले, र परिणाम स्वरूप त्यो उनीहरूको शत्रु र उनीहरूको निम्ति दुःखको कारण बन्यो । निश्चय फिरऔन र हामान र उनीहरूका सेना गम्भीर अपराधी नै थिए ।

وَقَالَتِ امۡرَاَتُ فِرۡعَوۡنَ قُرَّتُ عَيۡنٍ لِّىۡ وَلَكَ‌ ؕ لَا تَقۡتُلُوۡهُ ‌ۖ عَسٰٓى اَنۡ يَّنۡفَعَنَاۤ اَوۡ نَـتَّخِذَهٗ وَلَدًا وَّهُمۡ لَا يَشۡعُرُوۡنَ ﴿۹﴾

९) र फिरऔनकी श्रीमतीले भनीः कि यो मेरो र तिम्रो दुवैको आँखाको शीतलता हो, यसको हत्या नगर्नु, धेरै सम्भव छ कि यसले हामीलाई फाइदा पुऱ्याउँछ, अथवा हामीले यसलाई आफ्नो छोरा बनाइहालौं, र उनीहरू अनभिज्ञ नै थिए ।

وَاَصۡبَحَ فُؤَادُ اُمِّ مُوۡسٰى فٰرِغًا‌ ؕ اِنۡ كَادَتۡ

१०) र मूसा(अ.)की आमाको हृदय

لَتُبْدِي بِهِ لَوْلَا أَن رَّبَطْنَا عَلَىٰ قَلْبِهَا لِتَكُونَ مِنَ الْمُؤْمِنِينَ ﴿١٠﴾

बेचैन भइहाल्यो । यदि हामीले उसको हृदयलाई शान्त्वना प्रदान नगरिदिएको भए तिनले सम्भवतः यस घटनालाई प्रकट गरिदिन्थिइन् । उद्देश्य यो थियो कि उनी मोमिन्हरूमध्येबाट रहुन् ।

وَقَالَتْ لِأُخْتِهِ قُصِّيهِ فَبَصُرَتْ بِهِ عَن جُنُبٍ وَهُمْ لَا يَشْعُرُونَ ﴿١١﴾

११) मूसाको आमाले उसकी (मूसाकी) बहिनीसित भनिन् कि तिमी उसको पछि-पछि लाग । अतः तिनले उनलाई टाढैबाट हेरिराखिन् र फिरऔनका मानिसहरूलाई यसको जानकारी नै भएन ।

وَحَرَّمْنَا عَلَيْهِ الْمَرَاضِعَ مِن قَبْلُ فَقَالَتْ هَلْ أَدُلُّكُمْ عَلَىٰ أَهْلِ بَيْتٍ يَكْفُلُونَهُ لَكُمْ وَهُمْ لَهُ نَاصِحُونَ ﴿١٢﴾

१२) हामीले उनीहरू पुग्नु भन्दा अघिनै उसको निम्ति धाइआमाको दूध हराम (वर्जित) गरिदिएका थियौं अतः तिनले भनिन् कि के तिमीलाई यस्तो घरको ठेगाना बताउँ जसले कि तिम्रो निम्ति यस बालकको पालनपोषण गर्न सकोस् र यसको शुभचिन्तक पनि होस् ।

فَرَدَدْنَاهُ إِلَىٰ أُمِّهِ كَيْ تَقَرَّ عَيْنُهَا وَلَا تَحْزَنَ وَلِتَعْلَمَ أَنَّ وَعْدَ اللَّهِ حَقٌّ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿١٣﴾

१३) यसप्रकार हामीले उसलाई उसकी आमातिर फर्काएर ल्यायौं, ताकि तिनका आँखाहरू शीतल होउन् र तिनी शोकाकुल नहोउन् र ताकि तिनले जानिहालुन् कि अल्लाहको वाचा सत्य छ, तर उनीहरूमध्ये अधिकांशले बुझ्दैनन् ।

وَلَمَّا بَلَغَ أَشُدَّهُ وَاسْتَوَىٰ آتَيْنَاهُ حُكْمًا وَعِلْمًا وَكَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٤﴾

१४) र जब मूसा(अ.) तन्नेरी भए र पूर्णरूपले व्यस्कता प्राप्त गरिसके,

तब हामीले उनलाई निर्णयशक्ति र ज्ञान प्रदान गऱ्यौं । सुकर्म गर्नेहरूलाई हामीले यस्तै प्रकारले पुरस्कृत गर्दछौं ।

१५) र मूसा (अ.) नगरमा यस्तो बेला प्रवेश गरे जबकि त्यहाँका मानसिहरू सचेत थिएनन् । त्यहाँ उनले देखे कि दुईजना मानिसहरू झगडा गरिरहेका थिए । एउटा त मूसा( अ.) को जति मध्येको थियो र अर्को उनको दुश्मन मध्येको थियो । जुन व्यक्ति उनको जातिको थियो, त्यसले अर्को व्यक्तिको मुक़ाबिलामा, जो मूसाको शत्रुमध्ये थियो, सहायता माग्यो, तब उनले (मूसा अ.ले) उसलाई मुड्कीले प्रहार गरे र उसलाई मारिहाले । "मुसा"(अ.) भन्नथाले: कि यो शैतानको कारवाही हो । निश्चय नै शैतान त स्पष्ट शत्रु र पथभ्रष्ट गर्नेवाला छ ।

وَدَخَلَ الْمَدِينَةَ عَلَىٰ حِينِ غَفْلَةٍ مِّنْ أَهْلِهَا فَوَجَدَ فِيهَا رَجُلَيْنِ يَقْتَتِلَانِ هَٰذَا مِن شِيعَتِهِ وَهَٰذَا مِنْ عَدُوِّهِ ۖ فَاسْتَغَاثَهُ الَّذِي مِن شِيعَتِهِ عَلَى الَّذِي مِنْ عَدُوِّهِ فَوَكَزَهُ مُوسَىٰ فَقَضَىٰ عَلَيْهِ ۖ قَالَ هَٰذَا مِنْ عَمَلِ الشَّيْطَانِ ۖ إِنَّهُ عَدُوٌّ مُّضِلٌّ مُّبِينٌ ﴿١٥﴾

१६) उनले प्रार्थना गरे कि हे पालनकर्ता ! मैले स्वयं आफूमाथि अत्याचार गरें, अत: तिमीले मलाई क्षमा गरिदेऊ । तसर्थ अल्लाहले क्षमा गरिदियो । निश्चय नै अल्लाह बडो क्षमाशील, अत्यन्त दयावान छ ।

قَالَ رَبِّ إِنِّي ظَلَمْتُ نَفْسِي فَاغْفِرْ لِي فَغَفَرَ لَهُ ۚ إِنَّهُ هُوَ الْغَفُورُ الرَّحِيمُ ﴿١٦﴾

१७) उनले भन्न थाले: कि हे मेरो स्वामी जसरी तिमीले म माथि अनुकम्पा गरेका छौ, म कहिल्यै

قَالَ رَبِّ بِمَا أَنْعَمْتَ عَلَيَّ فَلَنْ أَكُونَ ظَهِيرًا لِّلْمُجْرِمِينَ ﴿١٧﴾

पनि कुनै अपराधीको सहायता गर्ने छैन ।

१८) अनि भोलिपल्ट बिहानै शहरमा डराउँदै खबर लिन प्रवेश गरे, अचानक हेर्नु भयो कि त्यही व्यक्ति जसले उनीसित सहायता चाहेको थियो, उनलाई पुकारिराखेको छ । मूसा (अ.)ले ऊसित भने कि तिमी त प्रत्यक्षरूपले मार्ग विचलित छौ ।

فَاَصْبَحَ فِي الْمَدِيْنَةِ خَآئِفًا يَّتَرَقَّبُ فَاِذَا الَّذِي اسْتَنْصَرَهٗ بِالْاَمْسِ يَسْتَصْرِخُهٗ ؕ قَالَ لَهٗ مُوْسٰى اِنَّكَ لَغَوِيٌّ مُّبِيْنٌ ﴿١٨﴾

१९) फेरि जब मूसा (अ.)ले इच्छा गरे, कि त्यो व्यक्तिलाई, जुन कि उनी दुवैको शत्रु थियो, समातिहालुन्, तब त्यसले भन्न थाल्यो कि जुनप्रकारले हिजो तिमीले एउटा व्यक्तिलाई मारिहालेका थियौ, त्यसैप्रकार मलाई पनि मार्न चाहन्छौ । धरतीमा क्रूर अत्याचारी हुन चाहन्छौ र तिमी यो चाहँदैनौं कि सुधार गर्नेवाला बन ।

فَلَمَّآ اَنْ اَرَادَ اَنْ يَّبْطِشَ بِالَّذِيْ هُوَ عَدُوٌّ لَّهُمَا ۙ قَالَ يٰمُوْسٰۤى اَتُرِيْدُ اَنْ تَقْتُلَنِيْ كَمَا قَتَلْتَ نَفْسًۢا بِالْاَمْسِ ۖ اِنْ تُرِيْدُ اِلَّآ اَنْ تَكُوْنَ جَبَّارًا فِي الْاَرْضِ وَمَا تُرِيْدُ اَنْ تَكُوْنَ مِنَ الْمُصْلِحِيْنَ ﴿١٩﴾

२०) (त्यसपश्चात) एउटा मानिस नगरको पल्लो छेउबाट दगुर्दै आयो र भन्यो कि हे मूसा(अ.) नगरका प्रमुखहरू तिम्रो हत्याको विषयमा परामर्श गरिराखेका छन् । अतः तिमी छिटै भागिहाल, म तिम्रो हितैषी हूँ ।

وَجَآءَ رَجُلٌ مِّنْ اَقْصَا الْمَدِيْنَةِ يَسْعٰى ۫ قَالَ يٰمُوْسٰۤى اِنَّ الْمَلَاَ يَاْتَمِرُوْنَ بِكَ لِيَقْتُلُوْكَ فَاخْرُجْ اِنِّيْ لَكَ مِنَ النّٰصِحِيْنَ ﴿٢٠﴾

२१) अनि मूसा(अ.) त्यहाँबाट डराइ-डराइ निस्किहाले र प्रार्थना गर्न थाले: कि हे मेरो पालनहार ! मलाई अत्याचारीहरूबाट छुटकरा प्रदान गर ।

فَخَرَجَ مِنْهَا خَآئِفًا يَّتَرَقَّبُ ۫ قَالَ رَبِّ نَجِّنِيْ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٢١﴾

२२) र जब "मदयनतिर" ध्यान दिए तब भन्नथाले: कि आशा छ कि मेरो पालनकर्ताले मलाई सोझो बाटो देखाउनेछ ।

وَلَمَّا تَوَجَّهَ تِلْقَآءَ مَدْيَنَ قَالَ عَسٰى رَبِّيْٓ اَنْ يَّهْدِيَنِيْ سَوَآءَ السَّبِيْلِ ﴿٢٢﴾

२३) जब "मदयनको" पानी भएको ठाउँमा पुगे त देखे, कि त्यहाँ मानिसहरू एकत्रित भएका छन् र (चौपायाहरूलाई) पानी खुवाइराखेका छन् ? र उनीहरूबाट पर एकातिर दुईवटा स्त्रीहरू आफ्ना चौपायाहरूलाई रोकेर उभेका छिन् । "मूसा(अ.) ले" सोधे तिम्रो के समस्या छ ? उनीहरूले भनिन् कि, हामी त्यसबेलासम्म पानी खुवाउन सक्दैनौं, जबसम्म यी गोठालाहरू आफ्ना जनावरहरू लग्दैनन् र हाम्रा बाबु धेरै उमेरको निकै वृद्ध छन् ।

وَلَمَّا وَرَدَ مَآءَ مَدْيَنَ وَجَدَ عَلَيْهِ اُمَّةً مِّنَ النَّاسِ يَسْقُوْنَ ۬ وَوَجَدَ مِنْ دُوْنِهِمُ امْرَاَتَيْنِ تَذُوْدٰنِ ۚ قَالَ مَا خَطْبُكُمَا ؕ قَالَتَا لَا نَسْقِيْ حَتّٰى يُصْدِرَ الرِّعَآءُ ٚ وَاَبُوْنَا شَيْخٌ كَبِيْرٌ ﴿٢٣﴾

२४) तब "मूसा(अ.) ले" स्वयम् उनीहरूका लागि पानी खुवाइदिए, अनि छायाँतिर गइहाले र भन्नथाले: कि हे पालनकर्ता ! तिमीले मेरो लागि जे जति कृपा प्रदान गर्दछौ मलाई त्यसको आवश्यकता छ ।

فَسَقٰى لَهُمَا ثُمَّ تَوَلّٰٓى اِلَى الظِّلِّ فَقَالَ رَبِّ اِنِّيْ لِمَآ اَنْزَلْتَ اِلَيَّ مِنْ خَيْرٍ فَقِيْرٌ ﴿٢٤﴾

२५) यतिकैमा ती दुवै मध्ये एउटी स्त्री लाज मान्दै "मूसा (अ.)को" पासमा आई (र) भन्नथाली कि तपाईलाई मेरो पिताले बोलाउनुहुन्छ ताकि

فَجَآءَتْهُ اِحْدٰىهُمَا تَمْشِيْ عَلَى اسْتِحْيَآءٍ ۫ قَالَتْ اِنَّ اَبِيْ يَدْعُوْكَ لِيَجْزِيَكَ اَجْرَ مَا سَقَيْتَ لَنَا ؕ فَلَمَّا جَآءَهٗ وَقَصَّ عَلَيْهِ الْقَصَصَ ۙ قَالَ لَا تَخَفْ ٙ نَجَوْتَ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ﴿٢٥﴾

तपाईले जुन हाम्रो चौपायाहरूलाई पानी खुवाउनु भएको छ, त्यसको पारिश्रमिक देउन् । जब उनी उनको पासमा आए र उनीसित (आफ्ना) बृतान्त बर्णन गरे, त उनले भने, कि कुनै भय नमान । तिमीले अत्याचारीहरूबाट छुटकारा पाइसकेका छौ ।

قَالَتْ إِحْدَىٰهُمَا يَٰٓأَبَتِ ٱسْتَـْٔجِرْهُ ۖ إِنَّ خَيْرَ مَنِ ٱسْتَـْٔجَرْتَ ٱلْقَوِىُّ ٱلْأَمِينُ ﴿٢٦﴾

२६) यी दुवै मध्ये एउटी स्त्रीले भनी: कि बुबा ! यिनलाई नोकरको रूपमा राखिहाल्नुस् । किन भने जसलाई तपाईं नोकरको रूपमा राख्नुहुन्छ, राम्रो त्यही हो जो बलवान् र विश्वसनीय होस् ।

قَالَ إِنِّىٓ أُرِيدُ أَنْ أُنكِحَكَ إِحْدَى ٱبْنَتَىَّ هَٰتَيْنِ عَلَىٰٓ أَن تَأْجُرَنِى ثَمَٰنِىَ حِجَجٍ ۖ فَإِنْ أَتْمَمْتَ عَشْرًا فَمِنْ عِندِكَ ۖ وَمَآ أُرِيدُ أَنْ أَشُقَّ عَلَيْكَ ۚ سَتَجِدُنِىٓ إِن شَآءَ ٱللَّهُ مِنَ ٱلصَّٰلِحِينَ ﴿٢٧﴾

२७) बृद्ध पुरुषले (मूसासित) भन्यो: कि म चाहन्छु आफ्ना यी दुई छोरीहरूमध्ये एउटीसित तपाईको विहे गरिदेऊँ, यस शर्तमा कि तपाई आठ बर्षसम्म मेरो यहाँ कामकाज गर्नुस् र यदि दशसाल सम्म काम पुरा गर्नु हुन्छ भने त्यो तपाईको तर्फबाट मलाई हो, म तपाईलाई धेरै कष्टमा पार्न चाहन्न, अल्लाहको इच्छा भए मलाई तपाई असल मानिसहरूमध्येको पाउनुहुनेछ ।

قَالَ ذَٰلِكَ بَيْنِى وَبَيْنَكَ ۖ أَيَّمَا ٱلْأَجَلَيْنِ قَضَيْتُ فَلَا عُدْوَٰنَ عَلَىَّ ۖ وَٱللَّهُ عَلَىٰ مَا نَقُولُ وَكِيلٌ ﴿٢٨﴾

२८) मूसा (अ.)ले भने कि त्यसो भए यो कुरा मेरो र तपाईंको बीचमा निश्चित भइहाल्यो । मैले जुन पनि अवधि पूरा गरेमा, म माथि कुनै अन्याय

नहोस् । र हामीले जुन सम्झौता गर्दैछौं, अल्लाह त्यसको साक्षी छ र उही सबैको योजनाकार हो ।

२९) अनि जब "मूसा(अ.)ले" आफ्नो अवधि पूरा गरे र आफ्नो घरवालालाई लिएर हिंडे त तूर पर्वत तिरबाट आगो देखियो, अनि आफ्नो स्त्रीसित भने कि तिमी पर्ख मैले आगो देखेको छु, शायद म त्यहाँबाट केही खबर लिएर आऊँ वा आगोको डल्लो लिएर आऊँ ताकि तिमी आगो ताप ।

فَلَمَّا قَضَىٰ مُوسَى الْأَجَلَ وَسَارَ بِأَهْلِهِۦٓ ءَانَسَ مِن جَانِبِ الطُّورِ نَارًا قَالَ لِأَهْلِهِ امْكُثُوٓا۟ إِنِّىٓ ءَانَسْتُ نَارًا لَّعَلِّىٓ ءَاتِيكُم مِّنْهَا بِخَبَرٍ أَوْ جَذْوَةٍ مِّنَ النَّارِ لَعَلَّكُمْ تَصْطَلُونَ ﴿٢٩﴾

३०) अनि जब त्यहाँ पुगे, त यस शुभ मैदानको दायाँ किनारको एउटा वृक्षबाट आवाज आयो: कि हे मूसा ! म नै अल्लाह हूँ, सम्पूर्ण जगत्को पालनकर्ता ।

فَلَمَّآ أَتَىٰهَا نُودِىَ مِن شَٰطِئِ الْوَادِ الْأَيْمَنِ فِى الْبُقْعَةِ الْمُبَٰرَكَةِ مِنَ الشَّجَرَةِ أَن يَٰمُوسَىٰٓ إِنِّىٓ أَنَا اللَّهُ رَبُّ الْعَٰلَمِينَ ﴿٣٠﴾

३१) र (यो पनि अवाज आयो कि) आफ्नो लट्ठी फ्याँकिहाल जब देखेकि त्यो चलिराखेको छ, मानौं सर्प होस् तब पिठ्यू फर्काई हिंडिदिए र पछि फर्केर पनि हेरेनन् । (हामीले भन्यौं कि) हे "मूसा" अगाड़ि आऊ र भय नगर निःसन्देह तिमी अमनमा छौ ।

وَأَنْ أَلْقِ عَصَاكَ ۖ فَلَمَّا رَءَاهَا تَهْتَزُّ كَأَنَّهَا جَآنٌّ وَلَّىٰ مُدْبِرًا وَلَمْ يُعَقِّبْ ۚ يَٰمُوسَىٰٓ أَقْبِلْ وَلَا تَخَفْ ۖ إِنَّكَ مِنَ الْءَامِنِينَ ﴿٣١﴾

३२) र (यी पनि कि) आफ्नो हात बगलमा लग अनि बिना कुनै रोग, चम्किलो रूपमा निस्कन्छ । र भयको बेला आफ्नो हातलाई आफूतिर खुम्च्याउनु । यी दुई निशानीहरू

اسْلُكْ يَدَكَ فِى جَيْبِكَ تَخْرُجْ بَيْضَآءَ مِنْ غَيْرِ سُوٓءٍ وَاضْمُمْ إِلَيْكَ جَنَاحَكَ مِنَ الرَّهْبِ ۖ فَذَٰنِكَ بُرْهَٰنَانِ مِن رَّبِّكَ إِلَىٰ فِرْعَوْنَ وَمَلَإِي۟هِۦٓ ۚ إِنَّهُمْ كَانُوا۟ قَوْمًا فَٰسِقِينَ ﴿٣٢﴾

तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो लागि हुन् । "फिरऔन" र उसका दरबारियाहरूका पासमा जाऊ । निश्चय नै उनीहरू धेरै अवज्ञाकारी मानिसहरू हुन् ।

३३) मूसा (अ.)ले भनेः हे पालनकर्ता ! उनीहरूको एउटा व्यक्तिको मैले हत्या गरिदिएको थिएँ, तसर्थ मलाई डर लाग्दछ कि उनीहरूले पनि मलाई मारिदिने छन् ।

قَالَ رَبِّ إِنِّي قَتَلْتُ مِنْهُمْ نَفْسًا فَأَخَافُ أَنْ
يَقْتُلُونِ ﴿٣٣﴾

३४) र "हारून" मेरो भाइको भाषा मभन्दा धेरै स्पष्ट छ । तसर्थ उसलाई पनि मेरो साथमा मेरो मद्दत गर्न पठाइदेऊ ताकि त्यसले मलाई सच्चा मानोस् । मलाई भय छ कि उनीहरूले मलाई असत्य भन्ने छन् ।

وَأَخِي هَارُونُ هُوَ أَفْصَحُ مِنِّي لِسَانًا فَأَرْسِلْهُ
مَعِيَ رِدْءًا يُصَدِّقُنِي ۖ إِنِّي أَخَافُ أَنْ يُكَذِّبُونِ ﴿٣٤﴾

३५) (अल्लाहले) भन्योः हामीले तिम्रो भाइको साथै तिम्रा हातलाई बलियो पार्नेछौं र तिमी दुवैलाई शक्ति प्रदान गर्नेछौं, हाम्रो निशनीहरूको कारणले उनीहरू तिमीसम्म पुग्न सक्ने छैनन् । तिमी र तिम्रा अनुयायीहरू नै अधिपत्य पाउने छौ ।

قَالَ سَنَشُدُّ عَضُدَكَ بِأَخِيكَ وَنَجْعَلُ
لَكُمَا سُلْطَانًا فَلَا يَصِلُونَ إِلَيْكُمَا ۚ بِآيَاتِنَا ۚ
أَنْتُمَا وَمَنِ اتَّبَعَكُمَا الْغَالِبُونَ ﴿٣٥﴾

३६) यसरी जब "मूसा"(अ.) उनको पासमा हाम्रा स्पष्ट निशानीहरू लिएर गए, तब उनीहरू भन्नथाले कि यो त बनावटी जादू हो, र यी

فَلَمَّا جَاءَهُمْ مُوسَىٰ بِآيَاتِنَا بَيِّنَاتٍ قَالُوا مَا هَٰذَا
إِلَّا سِحْرٌ مُفْتَرًى وَمَا سَمِعْنَا بِهَٰذَا فِي آبَائِنَا
الْأَوَّلِينَ ﴿٣٦﴾

(कुराहरू) हामीले आफ्नो बाबुबाजेको समयमा पनि कहिल्यै सुनेनौं ।

३७) मूसा(अ.) ले भने कि मेरो पालनहारले त्यस व्यक्तिलाई राम्ररी जान्दछ जसले उसकहाँबाट मार्गदर्शन लिएर आएको छ र जसको लागि अन्तिम दिन राम्रो परिणाम हुने छ । निश्चय नै अत्याचारीहरूको भलो हुनेछैन ।

وَقَالَ مُوسٰى رَبِّيْٓ اَعْلَمُ بِمَنْ جَآءَ بِالْهُدٰى مِنْ عِنْدِهٖ وَمَنْ تَكُوْنُ لَهٗ عَاقِبَةُ الدَّارِ ۭ اِنَّهٗ لَا يُفْلِحُ الظّٰلِمُوْنَ ﴿٣٧﴾

३८) फिरऔनले भन्यो हे दरबारीयाहरू ! म त तिम्रो लागि आफू बाहेक कसैलाई रब (पालनकर्ता) जान्दिन, तसर्थ हे हामान ! मेरो निम्ति माटोलाई आगोबाट पोलेर त्यसबाट एउटा महल बनाऊ, ताकि म (त्यसबाट) मूसा को पालनकर्तातिर हेर्न सकूँ र म त यसलाई असत्य नै ठान्दैछु ।

وَقَالَ فِرْعَوْنُ يٰٓاَيُّهَا الْمَلَاُ مَا عَلِمْتُ لَكُمْ مِّنْ اِلٰهٍ غَيْرِيْ ۚ فَاَوْقِدْ لِيْ يٰهَامٰنُ عَلَى الطِّيْنِ فَاجْعَلْ لِّيْ صَرْحًا لَّعَلِّيْٓ اَطَّلِعُ اِلٰٓى اِلٰهِ مُوْسٰى ۙ وَاِنِّيْ لَاَظُنُّهٗ مِنَ الْكٰذِبِيْنَ ﴿٣٨﴾

३९) उसले र उसको सेनाहरूले धरतीमा अनावश्यक घमण्ड गरे, र ठाने कि उनीहरूलाई हामीतिर फर्कनु छैन ।

وَاسْتَكْبَرَ هُوَ وَجُنُوْدُهٗ فِي الْاَرْضِ بِغَيْرِ الْحَقِّ وَظَنُّوْٓا اَنَّهُمْ اِلَيْنَا لَا يُرْجَعُوْنَ ﴿٣٩﴾

४०) अन्ततः हामीले उसलाई र उसका सेनाहरूलाई समातिहाल्यौं र उनीहरूलाई गहिरो पानीमा फ्याँकिदियौं । अब हेरिहाल कि अत्याचारीहरूको कस्तो परिणाम भयो ।

فَاَخَذْنٰهُ وَجُنُوْدَهٗ فَنَبَذْنٰهُمْ فِي الْيَمِّ ۚ فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الظّٰلِمِيْنَ ﴿٤٠﴾

४१) र हामीले उनीहरूलाई आगोतिर आव्हान गर्ने अगुवा बनाइदियौं र

وَجَعَلْنٰهُمْ اَىِٕمَّةً يَّدْعُوْنَ اِلَى النَّارِ ۚ وَيَوْمَ الْقِيٰمَةِ لَا يُنْصَرُوْنَ ﴿٤١﴾

क़यामतको दिन उनीहरूलाई कुनै सहायता प्राप्त हुने छैन ।

وَأَتْبَعْنَٰهُمْ فِي هَٰذِهِ ٱلدُّنْيَا لَعْنَةً ۖ وَيَوْمَ
ٱلْقِيَٰمَةِ هُم مِّنَ ٱلْمَقْبُوحِينَ ﴿٤٢﴾

४२) र हामीले यस संसारमा पनि उनको पछाड़ि एउटा अभिशाप लगाइदियौँ र क़यामतको दिन पनि उनी तिरस्कृत हुनेछन् ।

وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْكِتَٰبَ مِنۢ بَعْدِ مَآ
أَهْلَكْنَا ٱلْقُرُونَ ٱلْأُولَىٰ بَصَآئِرَ
لِلنَّاسِ وَهُدًى وَرَحْمَةً لَّعَلَّهُمْ
يَتَذَكَّرُونَ ﴿٤٣﴾

४३) र पहिलाका जातिहरूलाई नष्ट गरिसकेपछि हामीले “मूसालाई” यस्तो किताब (तौरेत) प्रदान गऱ्यौ, जुन मानिसहरूको निम्ति मार्गदर्शन र दयास्वरूप भएर आएको थियो । ताकि तिनीहरूले शिक्षा प्राप्त गरुन् ।

وَمَا كُنتَ بِجَانِبِ ٱلْغَرْبِيِّ إِذْ قَضَيْنَآ إِلَىٰ مُوسَى
ٱلْأَمْرَ وَمَا كُنتَ مِنَ ٱلشَّٰهِدِينَ ﴿٤٤﴾

४४) र जब हामीले “मूसातिर” (धर्मका) आदेश पठायौँ, तब तिमी (हे मोहम्मद) पश्चिमतिर थिएनौँ र न त तिमी देख्नेहरू मध्येको थियौ ।

وَلَٰكِنَّآ أَنشَأْنَا قُرُونًا فَتَطَاوَلَ عَلَيْهِمُ ٱلْعُمُرُ ۚ وَمَا كُنتَ
ثَاوِيًا فِيٓ أَهْلِ مَدْيَنَ تَتْلُوا۟ عَلَيْهِمْ ءَايَٰتِنَا
وَلَٰكِنَّا كُنَّا مُرْسِلِينَ ﴿٤٥﴾

४५) तर हामीले (मूसा पछि) कैयन् समूदायहरूको सृष्टि गऱ्यौँ र उनीमाथि धेरै समय बित्यो । र न तिमी “मदयनवालाहरू” मध्येबाट थियौ कि तिनीहरूको समक्ष हाम्रो आयतहरू पढेर सुनाऔ । अपितु हामीले नै त पैग़म्बरहरू पठाउनेवाला हौं ।

وَمَا كُنتَ بِجَانِبِ ٱلطُّورِ إِذْ نَادَيْنَا وَلَٰكِن رَّحْمَةً
مِّن رَّبِّكَ لِتُنذِرَ قَوْمًا مَّآ أَتَىٰهُم مِّن نَّذِيرٍ
مِّن قَبْلِكَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٤٦﴾

४६) र न त तिमी तूरपर्वतको पासमा उपस्थित थियौ, जब हामीले आवाज दियौं । किन्तु यो तिम्रो पालनहारको तर्फबाट एउटा दयालुता हो, ताकि तिमीले त्यस्ता मानिसहरूलाई सचेत

गरिहाल, जसको पासमा तिमी भन्दा अगाड़िको कोही सचेत गर्नेवाला आएन, आश्चर्य छैन कि उनीहरूले उपदेश हासिल गरुन् ।

४७) यदि उनीहरूले आफ्नै हातबाट आफ्ना अगाडीका कर्मलाई पठाएको कारण कुनै विपत्तिमा पर्ने कुरा नभएको भए उनीहरूले भन्ने थिए कि, हे पालनकर्ता ! तिमीले हामीतिर कुनै पैग़म्बर किन पठाएनौ ? ताकि हामी तिम्रा आयतहरूको अनुशरण गर्थ्यौं र ईमानवालामध्ये हुन्थ्यौं ।

وَلَوْلَآ أَن تُصِيبَهُم مُّصِيبَةٌۢ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ فَيَقُولُوا۟ رَبَّنَا لَوْلَآ أَرْسَلْتَ إِلَيْنَا رَسُولًا فَنَتَّبِعَ ءَايَٰتِكَ وَنَكُونَ مِنَ ٱلْمُؤْمِنِينَ ﴿٤٧﴾

४८) अनि जब उनीहरूको पासमा हामी कहाँबाट सत्य आइपुग्यो त उनीहरू भन्न थाले: कि जुन कुरो मूसा(अ.) लाई प्राप्त भएको थियो । त्यस्तो किन प्राप्त भएन ? त के जुन अघि मुसा(अ.)लाई दिइएको थियो, उनीहरूले त्यसमा कुफ्र गरेनन् ? स्पष्ट भनेका थिए कि यी दुवै जादूगर हुन् जुन एक अर्काको सहायता गर्दछन् र हामी त यिनीलाई इन्कार गर्दछौं ।

فَلَمَّا جَآءَهُمُ ٱلْحَقُّ مِنْ عِندِنَا قَالُوا۟ لَوْلَآ أُوتِىَ مِثْلَ مَآ أُوتِىَ مُوسَىٰٓ ۚ أَوَلَمْ يَكْفُرُوا۟ بِمَآ أُوتِىَ مُوسَىٰ مِن قَبْلُ ۖ قَالُوا۟ سِحْرَانِ تَظَٰهَرَا وَقَالُوٓا۟ إِنَّا بِكُلٍّ كَٰفِرُونَ ﴿٤٨﴾

४९) भनिदिनुस्: कि यदि तिमी साँचो हौ भने तिमीले पनि अल्लाहको तर्फबाट कुनै यस्तो किताब ल्याऊ, जुन यी दुवै भन्दा बढी मार्गदर्शन गर्नेवाला होस्, ताकि म पनि उसैको अनुयायी बनूँ ।

قُلْ فَأْتُوا۟ بِكِتَٰبٍ مِّنْ عِندِ ٱللَّهِ هُوَ أَهْدَىٰ مِنْهُمَآ أَتَّبِعْهُ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٤٩﴾

५०) अनि यदि यिनीहरूले तिम्रो कुरा स्वीकार गर्दैनन् भने तिमीले यो विश्वास गर कि यिनीहरू मात्र आफ्ना इच्छाहरूको अनुशरण गर्दैछन् र उसभन्दा धेरै मार्ग विचलित को हुन्सक्छ ? जसले अल्लाहको मार्गदर्शन छोडेर आफ्नो इच्छाको पछि हिंड्को छ । निःसन्देह अल्लाहले अत्याचारीहरूलाई मार्गदर्शन गर्दैन ।

فَإِنْ لَّمْ يَسْتَجِيبُوا لَكَ فَاعْلَمْ أَنَّمَا يَتَّبِعُونَ أَهْوَآءَهُمْ ۚ وَمَنْ أَضَلُّ مِمَّنِ اتَّبَعَ هَوٰىهُ بِغَيْرِ هُدًى مِّنَ اللّٰهِ ۚ إِنَّ اللّٰهَ لَا يَهْدِي الْقَوْمَ الظّٰلِمِينَ ﴿٥٠﴾

५१) र हामीले एक पछि अर्को निरन्तर रूपले उनीहरूको मार्गदर्शनका लागि आफ्ना कुराहरू (वाणी) पठाउँदै गरेका हौं, ताकि शिक्षा हासिल गरुन् ।

وَلَقَدْ وَصَّلْنَا لَهُمُ الْقَوْلَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٥١﴾

५२) जुन मानिसहरूलाई हामीले यस भन्दा अगाड़ि किताब प्रदान गरेका थियौं, उनीहरूले त यसमाथि पनि विश्वास गर्दछन् ।

الَّذِينَ آتَيْنٰهُمُ الْكِتٰبَ مِنْ قَبْلِهِ هُمْ بِهِ يُؤْمِنُونَ ﴿٥٢﴾

५३) र जब यसका आयतहरू उनीहरूलाई पढेर सुनाइन्छ तब भन्दछन्: कि हामीले यसमा आस्था राख्दछौं । निश्चय नै यो सत्य छ, हाम्रो पालनकर्ताको तर्फबाट हो । हामी त यसभन्दा अगाड़ि देखिनै आज्ञाकारी हौं ।

وَإِذَا يُتْلٰى عَلَيْهِمْ قَالُوٓا آمَنَّا بِهِ إِنَّهُ الْحَقُّ مِنْ رَّبِّنَآ إِنَّا كُنَّا مِنْ قَبْلِهِ مُسْلِمِينَ ﴿٥٣﴾

५४) यी मानिसलाई यिनीहरूले गरेको संयमको दुईगुणा प्रतिफल दिइनेछ । किनभने यिनीहरूले असल कर्मबाट नराम्रो कुरालाई हटाउँदै गर्दछन् र

أُولٰٓئِكَ يُؤْتَوْنَ أَجْرَهُمْ مَّرَّتَيْنِ بِمَا صَبَرُوا وَيَدْرَءُونَ بِالْحَسَنَةِ السَّيِّئَةَ وَمِمَّا رَزَقْنٰهُمْ يُنْفِقُونَ ﴿٥٤﴾

जुन हामीले उनीहरूलाई दिएका छौं, त्यसबाट दान गर्ने गर्दछन् ।

وَإِذَا سَمِعُوا اللَّغْوَ أَعْرَضُوا عَنْهُ وَقَالُوا لَنَا أَعْمَالُنَا وَلَكُمْ أَعْمَالُكُمْ سَلَامٌ عَلَيْكُمْ لَا نَبْتَغِي الْجَاهِلِينَ ﴿٥٥﴾

५५) र जब उनीहरूले व्यर्थको कुरा सुन्दछन् तब त्यसबाट अलग भइहाल्छन् र भन्दछन् कि हाम्रो निम्ति हाम्रा कर्महरू छन् र तिम्रा निम्ति तिम्रा कर्महरू छन् । तिमीलाई सलाम (शान्ति) होस् । हामीले अज्ञानहरूसंग विवाद गर्न चाहँदैनौं ।

إِنَّكَ لَا تَهْدِي مَنْ أَحْبَبْتَ وَلَٰكِنَّ اللَّهَ يَهْدِي مَنْ يَشَاءُ ۚ وَهُوَ أَعْلَمُ بِالْمُهْتَدِينَ ﴿٥٦﴾

५६) (हे मुहम्मद स.अ. !) तपाई आफूले चाहेको व्यक्तिलाई मार्गदर्शन गर्न सक्दैनौ तर अल्लाहले जसलाई चाहन्छ, मार्गदर्शन गर्दछ, र उसले मार्गदर्शन पाउनेहरूलाई राम्ररी जान्दछ ।

وَقَالُوا إِنْ نَتَّبِعِ الْهُدَىٰ مَعَكَ نُتَخَطَّفْ مِنْ أَرْضِنَا ۚ أَوَلَمْ نُمَكِّنْ لَهُمْ حَرَمًا آمِنًا يُجْبَىٰ إِلَيْهِ ثَمَرَاتُ كُلِّ شَيْءٍ رِزْقًا مِنْ لَدُنَّا وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٥٧﴾

५७) उनीहरूले भन्दछन्: कि यदि हामी तपाईको साथमा यस मार्गदर्शनको अनुशरण गर्दछौं भने आफ्नो भू-भागबाट अपहरित गरिहालिनेछौं । के खतराहरूबाट सुरक्षित शन्तिपूर्ण हरम (मक्का) मा हामीले उनीहरूलाई शरण दिएनौं-जहाँ हरेक प्रकारको जीविका पुऱ्याइन्छ र यो जीविका हाम्रो तर्फबाट हो, तर उनीहरूमध्ये धेरैले बुझ्दैनन् ।

وَكَمْ أَهْلَكْنَا مِنْ قَرْيَةٍ بَطِرَتْ مَعِيشَتَهَا ۖ فَتِلْكَ مَسَاكِنُهُمْ لَمْ تُسْكَنْ مِنْ بَعْدِهِمْ إِلَّا قَلِيلًا ۖ وَكُنَّا نَحْنُ الْوَارِثِينَ ﴿٥٨﴾

५८) र हामीले धेरै त्यस्ता बस्तीहरूलाई नष्ट गरिहाल्यौं, जसले आफ्नो मौज मस्तीमा घमण्ड गर्न लागेका थिए । यी तिनीहरूका बस्ने घर

हुन् जो उनी पश्चात् अति थोरै आबाद हुन सके र अन्ततः हामी नै हौं सबैको स्वामी ।

وَمَا كَانَ رَبُّكَ مُهْلِكَ الْقُرٰى حَتّٰى يَبْعَثَ فِيْٓ اُمِّهَا رَسُوْلًا يَّتْلُوْا عَلَيْهِمْ اٰيٰتِنَا ۚ وَمَا كُنَّا مُهْلِكِي الْقُرٰٓى اِلَّا وَاَهْلُهَا ظٰلِمُوْنَ ﴿٥٩﴾

५९) र तपाईको पालनकर्ताले कुनै बस्तीलाई नष्ट गर्दैन जबसम्मकि उनको कुनै ठूलो बस्तीमा कुनै संदेष्टा नपठाइहालोस्, जसले उनीहरूलाई हाम्रा आयतहरू पढेर सुनाओस् र हामीले बस्तीहरूलाई त्यसै बेला नष्ट गर्दछौं, जबकि त्यहाँका बासिन्दाहरू अत्याचारी नै भइहालुन् ।

وَمَآ اُوْتِيْتُمْ مِّنْ شَيْءٍ فَمَتَاعُ الْحَيٰوةِ الدُّنْيَا وَزِيْنَتُهَا ۚ وَمَا عِنْدَ اللّٰهِ خَيْرٌ وَّاَبْقٰى ۭ اَفَلَا تَعْقِلُوْنَ ﴿٦٠﴾

६०) र तिमीलाई जे जति प्रदान गरिएको छ त्यो त सांसारिक जीवनको सामाग्री र त्यसको शोभा मात्र हो । र जे जति अल्लाहको पासमा छ त्यो उत्तम र दीर्घकाल सम्म रहनेवाला छ । के तिमीले बुझ्दैनौ ?

اَفَمَنْ وَّعَدْنٰهُ وَعْدًا حَسَنًا فَهُوَ لَاقِيْهِ كَمَنْ مَّتَّعْنٰهُ مَتَاعَ الْحَيٰوةِ الدُّنْيَا ثُمَّ هُوَ يَوْمَ الْقِيٰمَةِ مِنَ الْمُحْضَرِيْنَ ﴿٦١﴾

६१) के त्यो व्यक्ति जोसँग हामीले राम्रो वाचा गरेका छौं र त्यसलाई उसले प्राप्त पनि गर्नेवाला छ, त्यस मानिस सरह हुनसक्छ जसलाई हामीले मात्र सांसारिक जीवनका सामग्री प्रदान गरेका छौं ? अनि त्यो क़यामतको दिन (समातिएर) पेश गरिनेछ ।

وَيَوْمَ يُنَادِيْهِمْ فَيَقُوْلُ اَيْنَ شُرَكَآءِيَ الَّذِيْنَ كُنْتُمْ تَزْعُمُوْنَ ﴿٦٢﴾

६२) र जुन दिन अल्लाहले उनीहरूलाई बोलाएर सोध्नेछ, कि तिमीहरू

आफूले ठानेको मेरा साझेदारहरू कहाँ छन् ?

قَالَ الَّذِينَ حَقَّ عَلَيْهِمُ الْقَوْلُ رَبَّنَا هَٰؤُلَاءِ الَّذِينَ أَغْوَيْنَا أَغْوَيْنَاهُمْ كَمَا غَوَيْنَا ۖ تَبَرَّأْنَا إِلَيْكَ ۖ مَا كَانُوا إِيَّانَا يَعْبُدُونَ ﴿٦٣﴾

६३) जुन मानिसहरूमाथि आदेश प्रमाणित भइसकेको हुनेछ, उनीहरूले जवाफ दिने छन्: कि हे हाम्रो पालनकर्ता ! यी तीनै हुन्, जसलाई हामीले मार्ग विचलित गरेका थियौं । हामी त्यस्तै उनीहरूलाई पथ-विचलित गरेका थिएँ जसरी हामी आफै पथभ्रष्ट थियौं । हामीले तिम्रो सम्मुख आफ्ना कुरा स्पष्ट गरिदियौं, कि यिनीहरूसित हाम्रो कुनै सम्बन्ध छैन र यिनीहरूले हामीलाई पूजा गर्दैनथे ।

وَقِيلَ ادْعُوا شُرَكَاءَكُمْ فَدَعَوْهُمْ فَلَمْ يَسْتَجِيبُوا لَهُمْ وَرَأَوُا الْعَذَابَ ۚ لَوْ أَنَّهُمْ كَانُوا يَهْتَدُونَ ﴿٦٤﴾

६४) र भनिने छ: कि आफ्ना साझेदारहरूलाई बोलाऊ, उनीहरूले तिनीहरूलाई बोलाउनेछन् तर तिनीहरूले उनीहरूको कुनै उत्तर दिने छैनन् र सब सजाय देख्नेछन्, यिनीहरूले मार्गदर्शन प्राप्त भएको भए कति राम्रो हुने थियो ।

وَيَوْمَ يُنَادِيهِمْ فَيَقُولُ مَاذَا أَجَبْتُمُ الْمُرْسَلِينَ ﴿٦٥﴾

६५) र जुन दिन उनीहरूलाई बोलाएर सोध्ने छ: कि तिमीहरूले पैग़म्बरहरूलाई के जवाफ दियौ ?

فَعَمِيَتْ عَلَيْهِمُ الْأَنبَاءُ يَوْمَئِذٍ فَهُمْ لَا يَتَسَاءَلُونَ ﴿٦٦﴾

६६) त्यस दिन उनीहरूले कुनै तर्क गर्नसक्ने छैनन्, अनि उनीहरू आपसमा पनि सोधपूछ गर्ने छैनन् ।

فَأَمَّا مَن تَابَ وَآمَنَ وَعَمِلَ صَالِحًا فَعَسَىٰ أَن يَكُونَ مِنَ الْمُفْلِحِينَ ﴿٦٧﴾

६७) हो, जसले तौबा गरिहाल्यो र ईमान ल्यायो र असल कर्म गर्‍यो

त निश्चित छ कि त्यो मुक्ति पाउनेहरू मध्येको हुनेछ ।

وَرَبُّكَ يَخْلُقُ مَا يَشَاءُ وَيَخْتَارُ ۗ مَا كَانَ لَهُمُ الْخِيَرَةُ ۚ سُبْحَانَ اللَّهِ وَتَعَالَىٰ عَمَّا يُشْرِكُونَ ﴿٦٨﴾

६८) र तपाईको पालनकर्ताले जे चाहन्छ, सृष्टि गर्दछ र जसलाई चाहन्छ रोज्दछ । उनीहरूमध्ये कसैलाई कुनै अधिकार प्राप्त छैन । अल्लाहकै लागि पवित्रता छ, ऊ ती सबै भन्दा महान र उच्च छ, जसलाई उनीहरूले साझेदार मान्दछन् ।

وَرَبُّكَ يَعْلَمُ مَا تُكِنُّ صُدُورُهُمْ وَمَا يُعْلِنُونَ ﴿٦٩﴾

६९) तपाईको पालनकर्ताले त्यो सबै जान्दछ, जुन उनीहरूका मनमा लुकेका हुन्छन् र जे जति उनीहरूले बाहिर व्यक्त गर्दछन् ।

وَهُوَ اللَّهُ لَا إِلَٰهَ إِلَّا هُوَ ۖ لَهُ الْحَمْدُ فِي الْأُولَىٰ وَالْآخِرَةِ ۖ وَلَهُ الْحُكْمُ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٧٠﴾

७०) उही अल्लाह हो, उसबाहेक कोही पूजाको योग्य छैन । यस संसार र परलोकमा सम्पूर्ण प्रशंसा उसैको लागि छ । र उही सर्वाधिपति हो र उसैतिर तिमीहरू फर्केर जानेछौ ।

قُلْ أَرَأَيْتُمْ إِنْ جَعَلَ اللَّهُ عَلَيْكُمُ اللَّيْلَ سَرْمَدًا إِلَىٰ يَوْمِ الْقِيَامَةِ مَنْ إِلَٰهٌ غَيْرُ اللَّهِ يَأْتِيكُمْ بِضِيَاءٍ ۖ أَفَلَا تَسْمَعُونَ ﴿٧١﴾

७१) भन्नुस्: कि तिमीले विचार त गर कि यदि अल्लाहले क़यामतको दिनसम्म सधैंको लागि तिमीलाई अँध्यारो गरिदियो भने अल्लाह बाहेक अर्को कोही पूजनीय छ, जसले तिमीलाई दिनको प्रकाश ल्याइदिनेछ, के तिमी सुन्दैनौ ?

قُلْ أَرَأَيْتُمْ إِنْ جَعَلَ اللَّهُ عَلَيْكُمُ النَّهَارَ سَرْمَدًا إِلَىٰ يَوْمِ الْقِيَامَةِ مَنْ إِلَٰهٌ غَيْرُ اللَّهِ يَأْتِيكُمْ بِلَيْلٍ تَسْكُنُونَ فِيهِ ۖ أَفَلَا تُبْصِرُونَ ﴿٧٢﴾

७२) भन्नुस्: कि के तिमीले विचार गर्‍यौ ? यदि अल्लाहले क़यामतको दिनसम्म सधैंको निम्ति तिम्रो लागि

दिन गरिदिएको भए पनि के अल्लाह बाहेक अर्को कोही पूजनीय छ जसले तिम्रो निम्ति रात ल्याइदेओस्, जसमा तिमीले विश्राम प्राप्त गर्दछौ ? के तिमी देख्दैनौ ?

وَمِن رَّحْمَتِهِ جَعَلَ لَكُمُ اللَّيْلَ وَالنَّهَارَ لِتَسْكُنُوا
فِيهِ وَلِتَبْتَغُوا مِن فَضْلِهِ وَلَعَلَّكُمْ
تَشْكُرُونَ ﴿٧٣﴾

७३) उसैले त आफ्नो दयालुताले तिम्रो निम्ति रात र दिन बनायो, ताकि तिमीले रातमा विश्राम प्राप्त गर र दिनमा उसले दिएको रोजी खोज, ताकि तिमीले कृतज्ञता व्यक्त गर ।

وَيَوْمَ يُنَادِيهِمْ فَيَقُولُ أَيْنَ شُرَكَائِيَ الَّذِينَ
كُنتُمْ تَزْعُمُونَ ﴿٧٤﴾

७४) र जुन दिन उसले तिनीहरूलाई बोलाएर सोध्नेछः कि मेरो ती साझेदारहरू, जसको बारेमा तिमीले दावी गर्थ्यौ, कहाँ छन् ?

وَنَزَعْنَا مِن كُلِّ أُمَّةٍ شَهِيدًا فَقُلْنَا هَاتُوا
بُرْهَانَكُمْ فَعَلِمُوا أَنَّ الْحَقَّ لِلَّهِ وَضَلَّ عَنْهُم
مَّا كَانُوا يَفْتَرُونَ ﴿٧٥﴾

७५) र हामीले प्रत्येक समुदायहरूबाट एउटा साक्षी निकाल्नेछौं र भन्नेछौंः कि आफ्नो प्रमाण प्रस्तुत गर त्यतिखेर उनीहरूले थाहा पाइहाल्नेछन् कि सत्य कुरा अल्लाह कै लागि हो र जे जति उनीहरूले झूठो कुरा रच्दथे, ती सबै उनीहरूबाट हराइहाल्नेछ ।''

إِنَّ قَارُونَ كَانَ مِن قَوْمِ مُوسَىٰ فَبَغَىٰ عَلَيْهِمْ
وَآتَيْنَاهُ مِنَ الْكُنُوزِ مَا إِنَّ مَفَاتِحَهُ لَتَنُوأُ
بِالْعُصْبَةِ أُولِي الْقُوَّةِ إِذْ قَالَ لَهُ قَوْمُهُ
لَا تَفْرَحْ إِنَّ اللَّهَ لَا يُحِبُّ الْفَرِحِينَ ﴿٧٦﴾

७६) निश्चय नै ''क़ारून'' मुसाको क़ौममध्येको थियो, तर उसले उनको विरुद्ध अत्याचार गर्न थालेको थियो । र हामीले उसलाई यति खजाना दिएका थियौं कि त्यसको साँचोहरू अनेक वलशालीहरूका लागि पनि उचाल्न गाह्रो थियो । एकचोटी

जब ऊ सित उसको समूहका मानिसले भने कि उन्मत नहोऊ किनभने अल्लाहले उन्मादीहरूलाई रुचाउँदैनन् ।

وَابْتَغِ فِيمَا آتَاكَ اللَّهُ الدَّارَ الْآخِرَةَ ۖ وَلَا تَنْسَ نَصِيبَكَ مِنَ الدُّنْيَا ۖ وَأَحْسِنْ كَمَا أَحْسَنَ اللَّهُ إِلَيْكَ ۖ وَلَا تَبْغِ الْفَسَادَ فِي الْأَرْضِ ۖ إِنَّ اللَّهَ لَا يُحِبُّ الْمُفْسِدِينَ ﴿٧٧﴾

७७) र जुन (सम्पत्ति) तिमीलाई अल्लाहले प्रदान गरेको छ, त्यसबाट आख़िरतको घरको निर्माण गर र संसारिक भाग पनि नबिर्स, र जस्तो कि अल्लाहले तिमीलाई भलो गरेको छ तिमी पनि राम्रो व्यवहार गर र धरतीमा उपद्रव नचाह किनभने अल्लाहले उपद्रवीहरूलाई मनपराउँदैन ।

قَالَ إِنَّمَا أُوتِيتُهُ عَلَىٰ عِلْمٍ عِنْدِي ۚ أَوَلَمْ يَعْلَمْ أَنَّ اللَّهَ قَدْ أَهْلَكَ مِنْ قَبْلِهِ مِنَ الْقُرُونِ مَنْ هُوَ أَشَدُّ مِنْهُ قُوَّةً وَأَكْثَرُ جَمْعًا ۚ وَلَا يُسْأَلُ عَنْ ذُنُوبِهِمُ الْمُجْرِمُونَ ﴿٧٨﴾

७८) उसले भन्योः मलाई त यी सबै मेरो आफ्नो व्यक्तिगत ज्ञानको कारण प्राप्त भएको छ । के उसलाई थाहा छैन, कि अल्लाहले उसभन्दा अगाडि कैयन् बस्तीहरूलाई नष्ट गरिसकेको छ, जो शक्तिमा उसभन्दा बढी र उस भन्दा अधिक धनसम्पति वाला थिए ? र अपराधीहरूसित त उनको अपराधहरूका बारेमा यस्तो बेला सोधपूछ गरिदैन ।

فَخَرَجَ عَلَىٰ قَوْمِهِ فِي زِينَتِهِ ۖ قَالَ الَّذِينَ يُرِيدُونَ الْحَيَاةَ الدُّنْيَا يَا لَيْتَ لَنَا مِثْلَ مَا أُوتِيَ قَارُونُ إِنَّهُ لَذُو حَظٍّ عَظِيمٍ ﴿٧٩﴾

७९) अनि क़ारून आफ्नो कौमको अगाडि पूरै सजधजकासाथ निस्क्यो, त सांसारिक जीवन रुचाउनेहरूले भन्नथालेः कि ''कारूनले'' पाएको जस्तो, हामीले पनि पाएको भए राम्रो हुने थियो, यो त बडो भाग्यमानी रहेछ ।

८०) तर ज्ञानीहरूले तिनीहरूलाई सम्झाउन थाले कि असल मानिसहरूको निम्ति, जसले ईमान ल्याए र असल कर्म गरे अल्लाह कहाँ जुन प्रतिफल छ, त्यो नै राम्रो छ । यो कुरा धैर्यवान्‌हरूको हृदयमा मात्र स्थापित हुने गर्दछ ।

وَقَالَ الَّذِينَ أُوتُوا الْعِلْمَ وَيْلَكُمْ ثَوَابُ اللَّهِ خَيْرٌ لِّمَنْ آمَنَ وَعَمِلَ صَالِحًا ۚ وَلَا يُلَقَّاهَا إِلَّا الصَّابِرُونَ ﴿٨٠﴾

८१) अन्ततः हामीले उसको महल संगै उसलाई धरतीमा धँसाई दियौं अनि अल्लाह बाहेक कुनै समुदाय उसको मद्दतको लागि तयार हुन सकेन र न त उसले आफ्नो रक्षा आफै गर्न सक्यो ।

فَخَسَفْنَا بِهِ وَبِدَارِهِ الْأَرْضَ فَمَا كَانَ لَهُ مِن فِئَةٍ يَنصُرُونَهُ مِن دُونِ اللَّهِ وَمَا كَانَ مِنَ الْمُنتَصِرِينَ ﴿٨١﴾

८२) र जुन मानिसहरूले, हिजो उसको स्थान पाउने कामना गरिराखेका थिए, आज भन्नथाले, कि के तिमीलाई थाहा छैन, कि अल्लाहले नै आफ्ना भक्तहरूमध्ये जसलाई जीविका प्रशस्त दिन चाहन्छ दिन्छ र जसलाई चाहन्छ सीमित गरिदिन्छ । यदि अल्लाहले हामीमाथि उपकार नगरेको भए त हामीलाई पनि धँसाइदिने थियो । के तिमीलाई थाहा छैन, कि कृतध्नहरू कहिल्यै सफल हुँदैनन् ।

وَأَصْبَحَ الَّذِينَ تَمَنَّوْا مَكَانَهُ بِالْأَمْسِ يَقُولُونَ وَيْكَأَنَّ اللَّهَ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ مِنْ عِبَادِهِ وَيَقْدِرُ ۖ لَوْلَا أَن مَّنَّ اللَّهُ عَلَيْنَا لَخَسَفَ بِنَا ۖ وَيْكَأَنَّهُ لَا يُفْلِحُ الْكَافِرُونَ ﴿٨٢﴾

८३) त्यो आख़िरतको राम्रो घर हामीले ती मानिसहरूको निम्ति तयार गरेका छौं, जसले धरतीमा आफूलाई ठूलो देखाउने काम तथा उपद्रव र घमण्ड

تِلْكَ الدَّارُ الْآخِرَةُ نَجْعَلُهَا لِلَّذِينَ لَا يُرِيدُونَ عُلُوًّا فِي الْأَرْضِ وَلَا فَسَادًا ۚ وَالْعَاقِبَةُ لِلْمُتَّقِينَ ﴿٨٣﴾

गर्दैनन् संयमीहरूका लागि अत्यन्त राम्रो परिणाम छ ।

مَنْ جَآءَ بِالْحَسَنَةِ فَلَهٗ خَيْرٌ مِّنْهَا ۚ وَمَنْ جَآءَ بِالسَّيِّئَةِ فَلَا يُجْزَى الَّذِيْنَ عَمِلُوا السَّيِّاٰتِ اِلَّا مَا كَانُوْا يَعْمَلُوْنَ ﴿٨٤﴾

८४) जुन मानिसले सत्कर्म लिएर आउँनेछ त्यसले त्यसभन्दा उत्तम प्राप्त गर्नेछ र जसले कुकर्म लिएर आउँनेछ त दुष्कर्म गर्नेहरूलाई त त्यसैको बदला प्राप्त हुनेछ, जुन तिनीहरूले गर्ने गर्दथे ।

اِنَّ الَّذِيْ فَرَضَ عَلَيْكَ الْقُرْاٰنَ لَرَآدُّكَ اِلٰى مَعَادٍ ۭ قُلْ رَّبِّيْٓ اَعْلَمُ مَنْ جَآءَ بِالْهُدٰى وَمَنْ هُوَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٨٥﴾

८५) (हे पैग़म्बर स.अ. !) जुन अल्लाहले तपाईमाथि "कुरआन" अवतरित गरेको छ, उसले तपाईलाई पुनः पहिलेको स्थानतिर फर्काउनेवाला छ । भनिदिनुस् कि मेरो पालनकर्ताले त्यसलाई पनि राम्ररी जान्दछ, जसले मार्गदर्शन प्राप्त गरेको छ र उसलाई पनि जो स्पष्टरूपले मार्ग-विचलित छ ।

وَمَا كُنْتَ تَرْجُوْٓا اَنْ يُّلْقٰٓى اِلَيْكَ الْكِتٰبُ اِلَّا رَحْمَةً مِّنْ رَّبِّكَ فَلَا تَكُوْنَنَّ ظَهِيْرًا لِّلْكٰفِرِيْنَ ﴿٨٦﴾

८६) तपाईले त कहिले सोच्नु भएको थिएन, कि तपाई तिर किताब अवतरित गरिनेछ । तर यो तपाईको पालनकर्ताको दयालुताको कारण अवतरित भयो, अतः तपाईले कहिले पनि इन्कार गर्नेहरूको पृष्ठ-पोषक नबन्नु ।

وَلَا يَصُدُّنَّكَ عَنْ اٰيٰتِ اللّٰهِ بَعْدَ اِذْ اُنْزِلَتْ اِلَيْكَ وَادْعُ اِلٰى رَبِّكَ وَلَا تَكُوْنَنَّ مِنَ الْمُشْرِكِيْنَ ﴿٨٧﴾

८७) हेरी राख्नुस् यी काफिरले अल्लाहका आयतबाट तपाईलाई रोकी नदेऊन्, यस पश्चात जबकि यो तपाई माथि अवतरित भइसकेको छ । र आफ्नो पालनकर्तातिर बोलाउदै

गर्नुस् र बहुदेववादीहरूमा कहिल्यै शम्मिलित नहुनु ।

८८) र अल्लाहसँग कुनै अरु पुज्यलाई नपुकार्नु । उसबाहेक कोही सत्य पुज्य छैन । उसको अनुहार बाहेक हरेक कुरा नाशवान् छ । आदेशको अधिकार उसैलाई छ र उसैतिर तिमी सबैलाई फर्केर जानुछ ।

وَلَا تَدْعُ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ ۘ لَآ اِلٰهَ اِلَّا هُوَ ۟ كُلُّ شَیْءٍ هَالِكٌ اِلَّا وَجْهَهٗ ؕ لَهُ الْحُكْمُ وَاِلَیْهِ تُرْجَعُوْنَ ۠﴿۸۸﴾



# सूरतुल् अन्कबूत-२९



सूरतुल् अन्कबूत मक्की हो, यसमा ६९ आयत र ७ रुकूअ्हरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

الٓمّٓ ۚ ﴿١﴾

१) अलिफ-लाम-मीम् ।

اَحَسِبَ النَّاسُ اَنْ يُّتْرَكُوْٓا اَنْ يَّقُوْلُوْٓا اٰمَنَّا وَهُمْ لَا يُفْتَنُوْنَ ﴿٢﴾

२) के मानिसहरूले यो ठानेका छन्, कि (मात्र) यो भन्नाले कि हामीले ईमान ल्यायौं, तिनीहरूको परीक्षा गरिने छैन ?

وَلَقَدْ فَتَنَّا الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَلَيَعْلَمَنَّ اللّٰهُ الَّذِيْنَ صَدَقُوْا وَلَيَعْلَمَنَّ الْكٰذِبِيْنَ ﴿٣﴾

३) यिनी भन्दा पहिला गुज्रिसकेकाहरूको पनि हामीले परीक्षा लियौं । निश्चित रूपले अल्लाहले त उनीहरूको बारेमा पनि थाहा पाउने छ, जो सत्य छन् र उनीहरूको पनि जानकारी राख्ने छ जो झूठा छन् ।

اَمْ حَسِبَ الَّذِيْنَ يَعْمَلُوْنَ السَّيِّاٰتِ اَنْ يَّسْبِقُوْنَا ۭ سَاۗءَ مَا يَحْكُمُوْنَ ﴿٤﴾

४) के उनीहरू, जसले नराम्रो कर्म गर्दछन् यो ठान्दछन् कि यिनीहरू हाम्रा नियन्त्रणबाट बाहिर गइहाल्नेछन् । यिनीहरूले कस्तो नराम्रो ठानी राखेका छन् ।

مَنْ كَانَ يَرْجُوْا لِقَاۗءَ اللّٰهِ فَاِنَّ اَجَلَ اللّٰهِ لَاٰتٍ ۭ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٥﴾

५) जुन व्यक्तिहरूले अल्लाहसँगको भेटको आशा गर्दछन्, त अल्लाहको निर्धारित समय (क़यामत) त आउने नै छ । र ऊ सबै कुरा सुन्दछ, जान्दछ ।

६) र प्रयत्न गर्ने प्रत्येक व्यक्तिले आफ्नै भलोको निम्ति प्रयत्न गर्दछ । निश्चय नै अल्लाह सम्पूर्ण संसारबाट निस्पृह छ ।

وَمَنْ جٰهَدَ فَاِنَّمَا يُجَاهِدُ لِنَفْسِهٖ ۗ اِنَّ اللّٰهَ لَغَنِيٌّ عَنِ الْعٰلَمِيْنَ ۝٦

७) र जुन मानिसहरूले विश्वास गरे र उनीहरूले (सुन्नत अनुरूप) उत्तम कर्म गरे, हामीले उनीहरूबाट सबै पापहरू हटाइदिने छौं र उनीहरूलाई अवश्य नै उनका सत्कर्मको राम्रो पुरस्कार प्रदान गर्नेछौं ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُكَفِّرَنَّ عَنْهُمْ سَيِّاٰتِهِمْ وَلَنَجْزِيَنَّهُمْ اَحْسَنَ الَّذِيْ كَانُوْا يَعْمَلُوْنَ ۝٧

८) र हामीले हरेक मानिसलाई आफ्ना आमा बाबुसँग राम्रो व्यवहार गर्न आदेश दिएका छौं । हो यदि तिनीहरूले यो चाहन्छन कि तपाईले मसँग अरुलाई मेरो साझेदार ठहराऊ, जसबारे तपाईलाई ज्ञान छैन, त उनीहरूको कुरा नमान । मतिर नै तिमी सबैलाई फर्केर आउनुछ । अनि मैले तिमीलाई त्यो सबै बताउने छु जुन तिमीले गर्ने गर्दथ्यौ ।

وَوَصَّيْنَا الْاِنْسَانَ بِوَالِدَيْهِ حُسْنًا ۗ وَاِنْ جٰهَدٰكَ لِتُشْرِكَ بِيْ مَا لَيْسَ لَكَ بِهٖ عِلْمٌ فَلَا تُطِعْهُمَا ۗ اِلَيَّ مَرْجِعُكُمْ فَاُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۝٨

९) र जुन मानिसहरूले ईमान ल्याए र असल कर्म गरिरहे, उनीहरूलाई हामी आफ्ना असल सेवकहरूमा शम्मिलित गर्नेछौं ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُدْخِلَنَّهُمْ فِي الصّٰلِحِيْنَ ۝٩

१०) र केही मानिसहरू यस्ता पनि छन् जसले मुखले भन्दछन्, कि हामीले अल्लाहमाथि आस्था राख्यौं । तर जब उनीहरूलाई अल्लाहको बाटोमा कुनै कष्ट पुग्दछ त मानिसहरूको

وَمِنَ النَّاسِ مَنْ يَّقُوْلُ اٰمَنَّا بِاللّٰهِ فَاِذَآ اُوْذِيَ فِي اللّٰهِ جَعَلَ فِتْنَةَ النَّاسِ كَعَذَابِ اللّٰهِ ۗ وَلَىِٕنْ جَآءَ نَصْرٌ مِّنْ رَّبِّكَ لَيَقُوْلُنَّ اِنَّا كُنَّا مَعَكُمْ ۗ اَوَلَيْسَ اللّٰهُ بِاَعْلَمَ بِمَا فِيْ صُدُوْرِ الْعٰلَمِيْنَ ۝١٠

कष्टलाई यस्तो ठान्दछन् जस्तो अल्लाहको सजाय होस् र यदि पालनकर्ताको तर्फबाट कुनै सहायता पुग्दछ त भन्दछन्, कि हामी त तिम्रा साथमा थियौं । के जुन कुरो संसारवालाहरूको छातीमा छ, अल्लाह त्यसलाई जान्दैन ?

११) अल्लाहले उनीहरूलाई अवश्य जानि राख्छ जो सच्चा मोमिन छन् र कप्टीहरूलाई पनि जानिराख्छ ।

وَلَيَعْلَمَنَّ اللّٰهُ الَّذِيْنَ اٰمَنُوْا وَلَيَعْلَمَنَّ الْمُنٰفِقِيْنَ ﴿١١﴾

१२) काफिरहरू ईमानवालाहरूसित भन्दछन्: कि तिमीहरू हाम्रा मार्गहरूमा हिंड, हामीले तिम्रा पापको भारी बोकिहाल्नेछौं । जबकि उनीहरू उनका पापहरूमध्ये केही पनि बोझ्ह बोक्नेवाला छैनन् । यिनीहरू त मात्र झूठा हुन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لِلَّذِيْنَ اٰمَنُوا اتَّبِعُوْا سَبِيْلَنَا وَلْنَحْمِلْ خَطٰيٰكُمْ ؕ وَمَا هُمْ بِحٰمِلِيْنَ مِنْ خَطٰيٰهُمْ مِّنْ شَيْءٍ ؕ اِنَّهُمْ لَكٰذِبُوْنَ ﴿١٢﴾

१३) हो यिनीहरूले आफ्नो भारी बोक्नेछन् र आफ्नो बोझहरूको साथमा अन्य भारी पनि र जुन मनगढन्ते कुराहरू यिनीहरू रचिराखेका छन् क़यामतको दिन त्यसको बारेमा उनीहरूसित अवश्य नै सोधपूछ हुनेछ ।

وَلَيَحْمِلُنَّ اَثْقَالَهُمْ وَاَثْقَالًا مَّعَ اَثْقَالِهِمْ ؗ وَلَيُسْـَٔلُنَّ يَوْمَ الْقِيٰمَةِ عَمَّا كَانُوْا يَفْتَرُوْنَ ﴿١٣﴾

१४) र हामीले "नूह(अ.)लाई" उनको क़ौमतिर पठायौं, र उनी नौ सय पचासवर्ष उनीहरू बीच बसे ! अनि उनीहरूलाई हुरीले समात्यो र उनीहरू अत्याचारी नै थिए ।

وَلَقَدْ اَرْسَلْنَا نُوْحًا اِلٰى قَوْمِهٖ فَلَبِثَ فِيْهِمْ اَلْفَ سَنَةٍ اِلَّا خَمْسِيْنَ عَامًا ؕ فَاَخَذَهُمُ الطُّوْفَانُ وَهُمْ ظٰلِمُوْنَ ﴿١٤﴾

१५) अनि हामीले “नूह(अ.)लाई” र डुँगामा बस्नेवालाहरूलाई बचाइहाल्यौं र त्यस घटनालाई सम्पूर्ण संसारको निम्ति निशानी बनाई दियौं ।

فَأَنْجَيْنَٰهُ وَأَصْحَٰبَ ٱلسَّفِينَةِ وَجَعَلْنَٰهَآ ءَايَةً لِّلْعَٰلَمِينَ ﴿١٥﴾

१६) र इब्राहीम(अ.)ले,पनि आफ्नो कौंमसित भने कि अल्लाहको उपासना गर र उसित डर । यो तिम्रो निम्ति राम्रो छ यदि तिमी बुद्धिमान छौ ।

وَإِبْرَٰهِيمَ إِذْ قَالَ لِقَوْمِهِ ٱعْبُدُوا۟ ٱللَّهَ وَٱتَّقُوهُ ۖ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿١٦﴾

१७) तिमी त अल्लाहलाई छाडी मूर्तिहरूको पूजा गर्दछौ, र झूठा कुरा रच्दछौ र तिमीले अल्लाह बाहेक जसलाई पूज्दछौ, उनीहरूमा तिमीलाई जीविका दिने अधिकार छैन । अतः तिमीले अल्लाह कहाँबाट नै जीविका खोज र उसैको उपासना गर, र उसैको आभारी बन । तिमीलाई उसैतिर फर्केर जानुछ ।

إِنَّمَا تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ أَوْثَٰنًا وَتَخْلُقُونَ إِفْكًا ۚ إِنَّ ٱلَّذِينَ تَعْبُدُونَ مِن دُونِ ٱللَّهِ لَا يَمْلِكُونَ لَكُمْ رِزْقًا فَٱبْتَغُوا۟ عِندَ ٱللَّهِ ٱلرِّزْقَ وَٱعْبُدُوهُ وَٱشْكُرُوا۟ لَهُۥٓ ۖ إِلَيْهِ تُرْجَعُونَ ﴿١٧﴾

१८) र यदि तिमीले मलाई झूठा ठान्दछौ, त तिमी भन्दा अघिका कैयन् समुदायले पनि झूठा भनिसकेका छन् । रसुलहरूमाथि मात्र स्पष्ट रूपले (अल्लाहको संदेश) पुऱ्याइदिने जिम्मेवारी छ ।

وَإِن تُكَذِّبُوا۟ فَقَدْ كَذَّبَ أُمَمٌ مِّن قَبْلِكُمْ ۖ وَمَا عَلَى ٱلرَّسُولِ إِلَّا ٱلْبَلَٰغُ ٱلْمُبِينُ ﴿١٨﴾

१९) के उनीहरूले देखेनन्, कि अल्लाह कुन प्रकारले सृष्टिको आरम्भ गर्दछ ? फेरि उसको पुनरावृत्ति गर्नेछ ? निःसन्देह यो अल्लाहको निम्ति अत्यन्त सरल छ ।

أَوَلَمْ يَرَوْا۟ كَيْفَ يُبْدِئُ ٱللَّهُ ٱلْخَلْقَ ثُمَّ يُعِيدُهُۥٓ ۚ إِنَّ ذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرٌ ﴿١٩﴾

२०) भन्नुस् कि धरतीमा हिंडडुल गरेर

قُلْ سِيرُوا۟ فِى ٱلْأَرْضِ فَٱنظُرُوا۟ كَيْفَ

بَدَأَ الْخَلْقَ ثُمَّ اللَّهُ يُنشِئُ النَّشْأَةَ الْآخِرَةَ ۚ إِنَّ اللَّهَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٢٠﴾

हेर कि अल्लाहले कुन प्रकारले सृष्टिको आरम्भ गरेको छ । अनि अल्लाहले नै पछिको सृष्टि रच्नेछ र निश्चय नै अल्लाह हरेक कुरामाथि सामर्थ्यवान् छ ।

يُعَذِّبُ مَن يَشَاءُ وَيَرْحَمُ مَن يَشَاءُ ۖ وَإِلَيْهِ تُقْلَبُونَ ﴿٢١﴾

२१) जसलाई चाहन्छ सजाय दिन्छ, र जसमाथि चाहन्छ कृपा गर्दछ । र उसैतिर सबैले फर्केर जानुछ ।

وَمَا أَنتُم بِمُعْجِزِينَ فِي الْأَرْضِ وَلَا فِي السَّمَاءِ ۖ وَمَا لَكُم مِّن دُونِ اللَّهِ مِن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿٢٢﴾

२२) र तिमी न त धरतीमा अल्लाहलाई हैरान गर्न सक्छौ र न त आकाशमा, र अल्लाह बाहेक तिम्रो न कोही मित्र छ न कोही सहायक ।

وَالَّذِينَ كَفَرُوا بِآيَاتِ اللَّهِ وَلِقَائِهِ أُولَٰئِكَ يَئِسُوا مِن رَّحْمَتِي وَأُولَٰئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٢٣﴾

२३) र जुन मानिसहरूले अल्लाहका आयतहरू र उसँग हुने साक्षातकारलाई बिर्सन्छन्, उनी मेरो दयाबाट निराश भइहालुन् । र तिनै हुन्, जसको निम्ति दुःखद यातना छ ।

فَمَا كَانَ جَوَابَ قَوْمِهِ إِلَّا أَن قَالُوا اقْتُلُوهُ أَوْ حَرِّقُوهُ فَأَنجَاهُ اللَّهُ مِنَ النَّارِ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٢٤﴾

२४) अनि उसको क़ौमको भनाई मात्र यो थियो कि यसलाई कत्ल गरिदेऔ वा जलाई हालौ, अन्ततः अल्लाहले उनीलाई आगोबाट बचाई हाल्यो यसमा ईमानवालहरूको लागि धेरै निशानीहरू छन् ।

وَقَالَ إِنَّمَا اتَّخَذْتُم مِّن دُونِ اللَّهِ أَوْثَانًا مَّوَدَّةَ بَيْنِكُمْ فِي الْحَيَاةِ الدُّنْيَا ۖ ثُمَّ يَوْمَ الْقِيَامَةِ يَكْفُرُ بَعْضُكُم بِبَعْضٍ وَيَلْعَنُ بَعْضُكُم بَعْضًا وَمَأْوَاكُمُ النَّارُ وَمَا لَكُم مِّن نَّاصِرِينَ ﴿٢٥﴾

२५) इब्राहीम (अ.) ले भने कि "अल्लाहबाट टाढिएर तिमीहरूले जुन मूर्तिहरूलाई मात्र सांसारिक जीवनको कारण पूजा गर्दछौ । क़यामतको दिन तिमीहरू एक

अर्काबाट इन्कार गर्नेछौ, र एक-अर्कालाई धिक्कार्नेछौ, र तिमिहरू सबैका बासस्थान नर्क हुनेछ र तिम्रो कोही सहायता गर्नेवाला हुने छैन ।

فَـَٔامَنَ لَهُۥ لُوطٌ ۘ وَقَالَ إِنِّى مُهَاجِرٌ إِلَىٰ رَبِّىٓ ۖ إِنَّهُۥ هُوَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ﴿٢٦﴾

२६) अनि "लूतले" उनको (इब्राहीम अ.को) कुरामा ईमान ल्याए, र भन्नथाले: कि म आफ्नो पालनकर्तातिर हिजरत गर्दछु । निःसन्देह ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।

وَوَهَبْنَا لَهُۥٓ إِسْحَٰقَ وَيَعْقُوبَ وَجَعَلْنَا فِى ذُرِّيَّتِهِ ٱلنُّبُوَّةَ وَٱلْكِتَٰبَ وَءَاتَيْنَٰهُ أَجْرَهُۥ فِى ٱلدُّنْيَا ۖ وَإِنَّهُۥ فِى ٱلْءَاخِرَةِ لَمِنَ ٱلصَّٰلِحِينَ ﴿٢٧﴾

२७) र हामीले उनलाई (इब्राहीमलाई) "इस्हाक्" र "यअ्कूब" प्रदान गर्‍यौं र हामीले उसको सन्ततिमै पैगम्बरी र किताबहरू प्रदान गर्‍यौं । र हामीले उनलाई संसारमा पनि राम्रो प्रतिफल प्रदान गर्‍यौं र उनी आख़िरतमा पनि सत्कर्मीहरू मध्येका हुनेछन् ।

وَلُوطًا إِذْ قَالَ لِقَوْمِهِۦٓ إِنَّكُمْ لَتَأْتُونَ ٱلْفَٰحِشَةَ مَا سَبَقَكُم بِهَا مِنْ أَحَدٍ مِّنَ ٱلْعَٰلَمِينَ ﴿٢٨﴾

२८) र "लूत" (अ.) को पनि वर्णन गर जब उनले आफ्नो क़ौमसित भने: कि तिमीले त्यस्तो व्यभिचार गर्दछौ, जुन तिमी भन्दा पहिला सम्पूर्ण संसारमा कसैले पनि गरेको थिएन ।

أَئِنَّكُمْ لَتَأْتُونَ ٱلرِّجَالَ وَتَقْطَعُونَ ٱلسَّبِيلَ وَتَأْتُونَ فِى نَادِيكُمُ ٱلْمُنكَرَ ۖ فَمَا كَانَ جَوَابَ قَوْمِهِۦٓ إِلَّآ أَن قَالُوا۟ ٱئْتِنَا بِعَذَابِ ٱللَّهِ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ﴿٢٩﴾

२९) के तिमी (आनन्द प्राप्तिको लागि) पुरुषहरूसँग व्यभिचार गर्दछौ र बाटोहरूलाई बन्द गर्दछौ, र आफ्नो आम सभाहरूमा दुष्कर्म गर्दछौ ? अनि उनको क़ौमका मानिसहरूको

उत्तर यही थियो कि उनीहरूले भने: कि यदि तिमी साँचो हौ भने हामीमाथि अल्लाहका यातना ल्याऊ ।

قَالَ رَبِّ انْصُرْنِيْ عَلَى الْقَوْمِ الْمُفْسِدِيْنَ ﴿٣٠﴾

३०) (लूत(अ.)ले) प्रार्थना गरे कि हे मेरो पालनकर्ता ! यी उपद्रवीहरूको मुक़ाबिलामा मलाई सहायता गर ।

وَلَمَّا جَاءَتْ رُسُلُنَا إِبْرٰهِيْمَ بِالْبُشْرٰى قَالُوْا إِنَّا مُهْلِكُوْا أَهْلِ هٰذِهِ الْقَرْيَةِ إِنَّ أَهْلَهَا كَانُوْا ظٰلِمِيْنَ ﴿٣١﴾

३१) र जब हाम्रा फरिश्ताहरू इब्राहीम(अ.) को पासमा शुभ-सूचना लिएर आए, त उनीहरूले भन्नथाले: कि हामीले यस बस्तीका मानिसहरूलाई नष्ट गर्नेवाला छौं । नि:सन्देह यहाँ बस्ने मानिसहरू अत्याचारी हुन् ।

قَالَ إِنَّ فِيْهَا لُوْطًا قَالُوْا نَحْنُ أَعْلَمُ بِمَنْ فِيْهَا لَنُنَجِّيَنَّهُ وَأَهْلَهُ إِلَّا امْرَأَتَهُ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٣٢﴾

३२) इब्राहीम(अ.)ले भने कि यसमा त लूत पनि छन् । उनीहरू भन्नथाले: "कि जुन मानिसहरू यहाँ बस्दछन्, हामीलाई सबै थाहा छ । हामीले उनलाई र उनका घरवालाहरूलाई बचाइराख्नेछौं, तर उनकी स्वास्नी बाहेक, किनभने त्यो स्त्री पछि पर्नेहरू मध्येकी छे ।"

وَلَمَّا أَنْ جَاءَتْ رُسُلُنَا لُوْطًا سِيْءَ بِهِمْ وَضَاقَ بِهِمْ ذَرْعًا وَّقَالُوْا لَا تَخَفْ وَلَا تَحْزَنْ إِنَّا مُنَجُّوْكَ وَأَهْلَكَ إِلَّا امْرَأَتَكَ كَانَتْ مِنَ الْغٰبِرِيْنَ ﴿٣٣﴾

३३) र जब हाम्रा फरिश्ताहरू "लूत (अ.)को" नजिक आए, त, उनीहरूको कारणले उनी दु:खी भए र मनैमनमा चिन्तित भए । फरिश्ताहरूले भने: तपाई "डर नमान्नुहोस् र दु:ख पनि नमान्नुहोस् । हामी तपाईलाई र तपाईको घरवालाहरूलाई बचाइहाल्ने छौं, तर तपाईकी स्त्री सजायका लागि पछि पर्नेहरूमध्येकी हुनेछे ।"

إِنَّا مُنزِلُونَ عَلَىٰٓ أَهْلِ هَٰذِهِ ٱلْقَرْيَةِ رِجْزًا مِّنَ ٱلسَّمَآءِ بِمَا كَانُوا۟ يَفْسُقُونَ ﴿٣٤﴾

३४) हामीले यस बस्तिका मानिसहरूमाथि आकाशबाट यातना अवतरित गर्नेछौं, यसकारण कि उनीहरू अनियन्त्रित भइरहेका छन् ।

وَلَقَد تَّرَكْنَا مِنْهَآ ءَايَةًۢ بَيِّنَةً لِّقَوْمٍ يَعْقِلُونَ ﴿٣٥﴾

३५) र हामीले त्यस बस्तीलाई एउटा खुल्ला निशानी ती मानिसहरूका निम्ति बनाइदिएका छौं, जो बुद्धिले काम लिन चाहन्छन् ।

وَإِلَىٰ مَدْيَنَ أَخَاهُمْ شُعَيْبًا فَقَالَ يَٰقَوْمِ ٱعْبُدُوا۟ ٱللَّهَ وَٱرْجُوا۟ ٱلْيَوْمَ ٱلْءَاخِرَ وَلَا تَعْثَوْا۟ فِى ٱلْأَرْضِ مُفْسِدِينَ ﴿٣٦﴾

३६) र "मदयनतिर" उनको भाइ "शुऐबलाई" हामीले पठायौं उनले भने, "कि हे मेरा क़ौमका मानिस ! अल्लाहको उपासना गर र अन्तिम दिनको आशा राख र धरतीमा उत्पातको सिर्जना नगर्ने गर ।

فَكَذَّبُوهُ فَأَخَذَتْهُمُ ٱلرَّجْفَةُ فَأَصْبَحُوا۟ فِى دَارِهِمْ جَٰثِمِينَ ﴿٣٧﴾

३७) तैपनि उनीहरूले उनलाई झूठा ठाने, अन्ततः उनलाई भूकम्पले आइसमात्यो र उनीहरू आ-आफ्नो घरहरूमा बस्दा बस्दै घोप्टो भइहाले ।

وَعَادًا وَثَمُودَا۟ وَقَد تَّبَيَّنَ لَكُم مِّن مَّسَٰكِنِهِمْ ۖ وَزَيَّنَ لَهُمُ ٱلشَّيْطَٰنُ أَعْمَٰلَهُمْ فَصَدَّهُمْ عَنِ ٱلسَّبِيلِ وَكَانُوا۟ مُسْتَبْصِرِينَ ﴿٣٨﴾

३८) र हामीले "आद" र "समूदका मानिसहरूलाई" पनि नष्ट गरिहाल्यौं र उनीहरूको घरका अवशेषहरू तिम्रा आँखाका अगाड़ि छन् । शैतानले उनीहरूको कर्मलाई उनको निम्ति आकर्षक बनाएर देखाइदियो, र उनीहरूलाई सही बाटोबाट रोकिदियो, जबकि उनीहरू दृष्टिवाला र बुद्धिमान थिए ।

وَقَٰرُونَ وَفِرْعَوْنَ وَهَٰمَٰنَ ۖ وَلَقَدْ جَآءَهُم

३९) र "कारून" र फ़िरऔन" र

مُّوسٰى بِالْبَيِّنٰتِ فَاسْتَكْبَرُوْا فِى الْاَرْضِ وَمَا كَانُوْا سٰبِقِيْنَ ﴿٣٩﴾

"हामानलाई" पनि (नष्ट गरिदियौं) र उनको पासमा "मूसा (अ.)ले" स्पष्ट चमत्कारहरू लिएर आएका थिए, तैपनि उनीहरू धरतीमा घमण्ड गर्न थाले, र उनीहरू (हाम्रा) नियन्त्रणबाट निस्कन सक्नेवाला थिएनन् ।

فَكُلًّا اَخَذْنَا بِذَنْبِهٖ ۚ فَمِنْهُمْ مَّنْ اَرْسَلْنَا عَلَيْهِ حَاصِبًا ۚ وَمِنْهُمْ مَّنْ اَخَذَتْهُ الصَّيْحَةُ ۚ وَمِنْهُمْ مَّنْ خَسَفْنَا بِهِ الْاَرْضَ ۚ وَمِنْهُمْ مَّنْ اَغْرَقْنَا ۚ وَمَا كَانَ اللّٰهُ لِيَظْلِمَهُمْ وَلٰكِنْ كَانُوْٓا اَنْفُسَهُمْ يَظْلِمُوْنَ ﴿٤٠﴾

४०) अन्ततः हामीले सबैलाई उनीहरूको अपराधको अधिकताको कारण समातिहाल्यौं, अनि उनीहरू मध्ये केही (क़ौमेआद) माथि हामीले ढुङ्गा बर्साउने वायु पठायौं, र केही यस्ता थिए (समूद) जसलाई भयङ्कर आवाजले आइसमात्यो र ती मध्ये केही (कारून) लाई हामीले धरतीमा पुरिदियौं र केही यस्ता थिए (फिरऔन) जसलाई हामीले डुबाई दियौं । अल्लाह यस्तो होइन कि उनीहरूमाथि अत्याचार गरोस्, किन्तु उनीहरूले आफू स्वयं माथि नै अत्याचार गर्दथे ।

مَثَلُ الَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ اَوْلِيَآءَ كَمَثَلِ الْعَنْكَبُوْتِ ۚ اِتَّخَذَتْ بَيْتًا ۚ وَاِنَّ اَوْهَنَ الْبُيُوْتِ لَبَيْتُ الْعَنْكَبُوْتِ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٤١﴾

४१) जुन मानिसहरूले अल्लाह बाहेक अरुलाई संरक्षक बनाएका छन्, उनको उदाहरण माकुराको जस्तो छ कि उसले पनि एउटा घर बनाउँछे र कुनै सन्देह छैन कि तमाम घरहरूमा कमजोर माकुराको घर हुन्छ । यिनीहरूले यो कुरा बुझ्ने भए कति राम्रो हुने थियो ।

إِنَّ اللَّهَ يَعْلَمُ مَا يَدْعُونَ مِن دُونِهِۦ مِن شَيْءٍ ۚ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٤٢﴾

४२) अल्लाहले ती सबैलाई जान्दछ जसलाई यिनीहरूले अल्लाह बाहेक पुकार्दछन् र ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।

وَتِلْكَ الْأَمْثَالُ نَضْرِبُهَا لِلنَّاسِ ۖ وَمَا يَعْقِلُهَا إِلَّا الْعَالِمُونَ ﴿٤٣﴾

४३) यी दृष्टान्तहरू हामीले मानिसहरूलाई बुझ्नको निम्ति वर्णन गर्दछौं र यसलाई त मात्र ज्ञानवानले नै बुझ्दछन् ।

خَلَقَ اللَّهُ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّلْمُؤْمِنِينَ ﴿٤٤﴾

४४) अल्लाहले आकाशहरू र धरतीलाई सत्यताकासाथ सृष्टि गरेको छ । निश्चय नै यसमा ईमानवालाहरूको निम्ति ठुलो निशानी छ ।

اتْلُ مَا أُوحِيَ إِلَيْكَ مِنَ الْكِتَابِ وَأَقِمِ الصَّلَاةَ ۖ إِنَّ الصَّلَاةَ تَنْهَىٰ عَنِ الْفَحْشَاءِ وَالْمُنكَرِ ۗ وَلَذِكْرُ اللَّهِ أَكْبَرُ ۗ وَاللَّهُ يَعْلَمُ مَا تَصْنَعُونَ ﴿٤٥﴾

४५) (हे मुहम्मद स.अ.) त्यस किताबलाई पढ्ने गर्नुस्, जुन तपाईंलाई "वह्य" द्वारा पठाइएको छ, र नमाज कायम गर्नुस् । निःसन्देह नमाजले अश्लीलता र नराम्रो कुराबाट रोक्दछ । र अवश्य अल्लाहको स्मरण गर्नु त अत्यन्त ठूलो कुरो हो । तिमी जे गर्दैछौ अल्लाह जान्दछ ।

وَلَا تُجَادِلُوا أَهْلَ الْكِتَابِ إِلَّا بِالَّتِي هِيَ أَحْسَنُ إِلَّا الَّذِينَ ظَلَمُوا مِنْهُمْ ۖ وَقُولُوا آمَنَّا بِالَّذِي أُنزِلَ إِلَيْنَا وَأُنزِلَ إِلَيْكُمْ وَإِلَٰهُنَا وَإِلَٰهُكُمْ وَاحِدٌ وَنَحْنُ لَهُ مُسْلِمُونَ ﴿٤٦﴾

४६) र किताबवालाहरूसित उत्तम तरीका बाहेकले शास्त्रार्थ नगर, तर उनीहरू मध्ये जो अत्याचारी छन्, उनको कुरा अर्कै छ र स्पष्ट भन: "कि हामीले यस किताबमाथि ईमान ल्यायौं जुन हामीतिर अवतरित भयो र त्यसमाथि पनि जुन तिमीतिर अवतरित भयो । र

हाम्रो तिम्रो पूज्य एउटै हो । र हामी सबै उसैको आज्ञाकारी हौं ।''

४७) र यसै प्रकार हामीले तपाईंतिर किताब अवतरित गरेका छौं, त जसलाई हामीले किताब प्रदान गरेका छौं, उनीहरूले त्यसमाथि ईमान ल्याउँछन् र यिनीहरू (मुश्रिकहरू) मध्ये केहीले त्यसमाथि ईमान ल्याउँछन् र हाम्रा आयतहरूको इन्कार त काफिरहरूले मात्र गर्दछन् ।

وَكَذَٰلِكَ أَنزَلْنَا إِلَيْكَ الْكِتَابَ ۚ فَالَّذِينَ آتَيْنَاهُمُ الْكِتَابَ يُؤْمِنُونَ بِهِ ۖ وَمِنْ هَٰؤُلَاءِ مَن يُؤْمِنُ بِهِ ۚ وَمَا يَجْحَدُ بِآيَاتِنَا إِلَّا الْكَافِرُونَ ﴿٤٧﴾

४८) यस भन्दा पहिला तपाईंले कुनै किताब पढ्नु भएको थिएन र न कुनै किताबलाई आफ्नो हातले लेख्नु हुन्थ्यो, जसबाट यी मिथ्यावादीहरू सन्देहमा पर्न सक्दथे ।

وَمَا كُنتَ تَتْلُو مِن قَبْلِهِ مِن كِتَابٍ وَلَا تَخُطُّهُ بِيَمِينِكَ ۖ إِذًا لَّارْتَابَ الْمُبْطِلُونَ ﴿٤٨﴾

४९) बरु यो कुरआन त ती मानिसहरूको छातीमा विद्यमान स्पष्ट आयतहरू हुन् जसलाई ज्ञान प्रदान भएको छ । र हाम्रा आयतहरूको इन्कार त अत्याचारीहरूले मात्र गर्दछन् ।

بَلْ هُوَ آيَاتٌ بَيِّنَاتٌ فِي صُدُورِ الَّذِينَ أُوتُوا الْعِلْمَ ۚ وَمَا يَجْحَدُ بِآيَاتِنَا إِلَّا الظَّالِمُونَ ﴿٤٩﴾

५०) उनीहरूको भनाई छ: कि उसमाथि उसको पालनकर्ताको तर्फबाट निशानीहरू किन अवतरित भएनन् ?'' तपाईं भनिदिनुस् कि ''निशानीहरू त सबै अल्लाहकै पासमा छन् । र म त केवल स्पष्ट रूपले सचेत गर्नेवाला हूँ ।''

وَقَالُوا لَوْلَا أُنزِلَ عَلَيْهِ آيَاتٌ مِّن رَّبِّهِ ۖ قُلْ إِنَّمَا الْآيَاتُ عِندَ اللَّهِ وَإِنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٥٠﴾

५१) के उनीहरूको निम्ति यो पर्याप्त छैन ? कि हामीले तपाईंमाथि किताब

أَوَلَمْ يَكْفِهِمْ أَنَّا أَنزَلْنَا عَلَيْكَ الْكِتَابَ يُتْلَىٰ عَلَيْهِمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَرَحْمَةً وَذِكْرَىٰ لِقَوْمٍ يُؤْمِنُونَ ﴿٥١﴾

अवतरित गऱ्यौं, जुन कि उनीहरूलाई पढेर सुनाइन्छ । यसमा ईमान ल्याएकाहरूको निम्ति दयालुता (पनि) छ र उपदेश (पनि) ।

قُلْ كَفَىٰ بِاللَّهِ بَيْنِي وَبَيْنَكُمْ شَهِيدًا ۖ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۗ وَالَّذِينَ آمَنُوا بِالْبَاطِلِ وَكَفَرُوا بِاللَّهِ أُولَٰئِكَ هُمُ الْخَاسِرُونَ ﴿٥٢﴾

५२) भनिदिनुस् ! कि मेरो र तिम्रो बीचमा अल्लाह साक्षी हुनु पर्याप्त छ । जे जति आकाश र धरतीमा छ उसले सबै जान्दछ । जसले असत्यमा विश्वास गरे र अल्लाहलाई इन्कार गरे, तिनीहरूले ठूलो नोक्सानी भोग्नेछन् ।

وَيَسْتَعْجِلُونَكَ بِالْعَذَابِ ۚ وَلَوْلَا أَجَلٌ مُسَمًّى لَجَاءَهُمُ الْعَذَابُ وَلَيَأْتِيَنَّهُمْ بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ ﴿٥٣﴾

५३) यिनीहरूले तपाईंसित यातना (अल्लाहबाट दिइने अजाब) को लागि हतार गरिराखेका छन् । यदि मेरो तर्फबाट एउटा निश्चित समय निर्धारित नभइसकेको भए उनीहरूमाथि यातना पनि आई सक्ने थियो र त्यो कुनै समयमा अचानक उनीहरूमाथि अवश्य आएर नै छाड्नेछ ।

يَسْتَعْجِلُونَكَ بِالْعَذَابِ وَإِنَّ جَهَنَّمَ لَمُحِيطَةٌ بِالْكَافِرِينَ ﴿٥٤﴾

५४) यिनीहरूले सजायका लागि हतार गर्दैछन्, (धैर्यराखुन्) नर्कले त काफिरहरूलाई घेरिहाल्ने छ ।

يَوْمَ يَغْشَاهُمُ الْعَذَابُ مِنْ فَوْقِهِمْ وَمِنْ تَحْتِ أَرْجُلِهِمْ وَيَقُولُ ذُوقُوا مَا كُنْتُمْ تَعْمَلُونَ ﴿٥٥﴾

५५) त्यस दिन यातनाले उनीहरूलाई माथिदेखि तलसम्म छोपी राख्ने छ र अल्लाहको आदेश हुने छ कि जुन (गलत) काम तिमीले गर्ने गर्दथ्यौ अब त्यसको स्वाद चाख ।

يٰعِبَادِيَ الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ اَرْضِيْ وَاسِعَةٌ فَاِيَّايَ فَاعْبُدُوْنِ ﴿٥٦﴾

५६) "हे मेरा ईमानवाला सेवकहरू, मेरो धरती धेरै विस्तृत छ, अतः मेरै उपासना गर ।

كُلُّ نَفْسٍ ذَآئِقَةُ الْمَوْتِ ثُمَّ اِلَيْنَا تُرْجَعُوْنَ ﴿٥٧﴾

५७) प्रत्येक जीवले मृत्युको स्वाद चाख्ने वाला छ, अनि तिमी सबै हामीतिरै फर्काइनेछौ ।

وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَنُبَوِّئَنَّهُمْ مِّنَ الْجَنَّةِ غُرَفًا تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا نِعْمَ اَجْرُ الْعٰمِلِيْنَ ﴿٥٨﴾

५८) र जसले ईमानल्याए र असल कर्म गरिरहे, उनीहरूलाई निश्चयनै हामीले बहिश्त (स्वर्ग) का अग्ला-अग्ला महलहरूमा ठाउँ प्रदान गर्ने छौं, जसमुनि नहरहरू बगिराखेका छन् । जहाँ सधैं तिनीहरू बस्नेछन् । असल कर्म गर्नेहरूलाई यो कति राम्रो बदला हो ।

الَّذِيْنَ صَبَرُوْا وَعَلٰى رَبِّهِمْ يَتَوَكَّلُوْنَ ﴿٥٩﴾

५९) ती जसले धैर्य गरेर आफ्नो पालनकर्तामाथि भरोसा गर्दछन् ।

وَكَاَيِّنْ مِّنْ دَآبَّةٍ لَّا تَحْمِلُ رِزْقَهَا اللّٰهُ يَرْزُقُهَا وَاِيَّاكُمْ وَهُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٦٠﴾

६०) र धेरै जनावर यस्ता छन् जसले आफ्नो जीविका बोकी हिंडिराखेका हुदैनन् । अल्लाहले नै उनीहरूलाई जीविका प्रदान गर्दछ र तिमीलाई पनि । र ऊ सबैकुरा सुन्दछ, जान्दछ ।

وَلَئِنْ سَاَلْتَهُمْ مَّنْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ لَيَقُوْلُنَّ اللّٰهُ فَاَنّٰى يُؤْفَكُوْنَ ﴿٦١﴾

६१) र यदि तपाईले उनीहरूसँग सोध्नुहुन्छ कि आकाशहरू र धरतीलाई कसले सृष्टि गऱ्यो र सूर्य र चन्द्रलाई कसले काममा लगायो ? त उनीहरूले भनिहाल्नेछन् "कि अल्लाहले !" अनि उनीहरू कता विमुख भई जाँदैछन् ?

६२) अल्लाहले आफ्ना बन्दाहरूमध्ये जसको निम्ति चाहन्छ जीविका विस्तृत गरिदिन्छ र जसको लागि चाहन्छ संकुचित गरिदिन्छ। निःसन्देह अल्लाह प्रत्येक कुरा जान्दछ ।

اَللّٰهُ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ مِنْ عِبَادِهٖ وَيَقْدِرُ لَهٗ ۭ اِنَّ اللّٰهَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿٦٢﴾

६३) र यदि तपाईंले उनीहरूसित सोध्नुहुन्छ कि आकाशबाट पानी कसले बर्सायो, अनि त्यसबाट धरतीलाई मृत्यु पश्चात जीवित कसले गऱ्यो,? त निश्चयनै उनीहरूको जवाफ हुनेछ कि "अल्लाहले !" तपाईं भन्नुस् कि सम्पूर्ण प्रशंसा अल्लाहकै लागि छ । किन्तु उनीहरूमध्ये अधिकतरले बुद्धिले काम लिदैनन् ।

وَلَئِنْ سَاَلْتَهُمْ مَّنْ نَّزَّلَ مِنَ السَّمَآءِ مَآءً فَاَحْيَا بِهِ الْاَرْضَ مِنْۢ بَعْدِ مَوْتِهَا لَيَقُوْلُنَّ اللّٰهُ ۭ قُلِ الْحَمْدُ لِلّٰهِ ۭ بَلْ اَكْثَرُهُمْ لَا يَعْقِلُوْنَ ﴿٦٣﴾

६४) र यो सांसारिक जीवन त मात्र खेल तमाशा हो । निःसन्देह आखिरतको घरको जीवन नै वास्तविक जीवन हो। उनीहरूले यो बुझ्ने भए कति राम्रो हुने थियो ।

وَمَا هٰذِهِ الْحَيٰوةُ الدُّنْيَآ اِلَّا لَهْوٌ وَّلَعِبٌ ۭ وَاِنَّ الدَّارَ الْاٰخِرَةَ لَهِيَ الْحَيَوَانُ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٦٤﴾

६५) अनि जब यिनीहरू डुङ्गामा सवार हुन्छन् त अल्लाहलाई नै पुकार्दछन् विशुद्ध रूपमा उसैको निम्ति पूजालाई खास गरी, र जब उसले तिनीहरूलाई बचाएर शुष्क भूमिमा पुऱ्याइ दिन्छ तब तुरुन्तै (अल्लाहको) साझेदार ठहराउन थाल्छन् ।

فَاِذَا رَكِبُوْا فِي الْفُلْكِ دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۥ فَلَمَّا نَجّٰىهُمْ اِلَى الْبَرِّ اِذَا هُمْ يُشْرِكُوْنَ ﴿٦٥﴾

६६) ताकि हामीले उनीहरूलाई जे प्रदान गरेका छौं, त्यस प्रति कृतघ्नता

لِيَكْفُرُوْا بِمَآ اٰتَيْنٰهُمْ ۚ وَلِيَتَمَتَّعُوْا ۫ فَسَوْفَ يَعْلَمُوْنَ ﴿٦٦﴾

देखाउदै फाइदा पनि लिदैगरे । अतः शीघ्र नै उनीहरूले जानी हाल्नेछन् ।

६७) के उनीहरू देखेनन्, कि हामीले हरम (मक्का) शान्तिको ठाउँ बनाएका छौं, र मानिसहरू त्यसका वरिपरिबाट समाति हालिनेछन् । के यी मानिसहरूले असत्यमाथि त विश्वास गर्दछन् र अल्लाहको अनुकम्पा प्रति कृतघ्नता देखाउँछन् ?

اَوَلَمْ يَرَوْا اَنَّا جَعَلْنَا حَرَمًا اٰمِنًا وَّيُتَخَطَّفُ النَّاسُ مِنْ حَوْلِهِمْ ؕ اَفَبِالْبَاطِلِ يُؤْمِنُوْنَ وَبِنِعْمَةِ اللّٰهِ يَكْفُرُوْنَ ﴿٦٧﴾

६८) त्यो व्यक्ति भन्दा बढी अत्याचारी को होला ? जसले अल्लाहको बारेमा मन गढन्ते कुरा रच्दछ वा सत्यलाई भूठो भन्दछ, जबकि त्यो (सत्य) उसको पासमा आइसकेको हुन्छ ? के यस्ता काफिरहरूको बस्ने ठाउँ नर्क हुनेछैन ?

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا اَوْ كَذَّبَ بِالْحَقِّ لَمَّا جَآءَهٗ ؕ اَلَيْسَ فِيْ جَهَنَّمَ مَثْوًى لِّلْكٰفِرِيْنَ ﴿٦٨﴾

६९) र जुन मानिसहरूले हाम्रो बाटोमा कष्ट सहन्छन्, हामीले, उनीहरूलाई अवश्य आफ्ना मार्गहरू देखाउनेछौं र, निश्चयनै अल्लाह त सुकर्मीहरूको साथी हो ।

وَالَّذِيْنَ جٰهَدُوْا فِيْنَا لَنَهْدِيَنَّهُمْ سُبُلَنَا ؕ وَاِنَّ اللّٰهَ لَمَعَ الْمُحْسِنِيْنَ ﴿٦٩﴾



# सूरतुर्रूम-३०



सूरतुर्रूम मक्की हो, यसमा ६० आयतहरू र ६ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

| | |
|---|---|
| १) अलिफ् : लाम्. - मीम., | الٓمّٓ ﴿١﴾ |
| २) रूमीहरू परास्त भइसकेका छन् | غُلِبَتِ الرُّوْمُ ﴿٢﴾ |
| ३) निकटवर्ती क्षेत्रहरूमा र उनीहरू परास्त भएपछि छिटै प्रभावी भइहाल्नेछन् । | فِيْٓ اَدْنَى الْاَرْضِ وَهُمْ مِّنْۢ بَعْدِ غَلَبِهِمْ سَيَغْلِبُوْنَ ﴿٣﴾ |
| ४) केही वर्षमै । यस भन्दा पहिला र यसपछि पनि अख्तियार अल्लाहकै छ, र त्यस दिन मोमीनहरू खुशी हुनेछन् । | فِيْ بِضْعِ سِنِيْنَ ۗ لِلّٰهِ الْاَمْرُ مِنْ قَبْلُ وَمِنْۢ بَعْدُ ۗ وَيَوْمَئِذٍ يَّفْرَحُ الْمُؤْمِنُوْنَ ﴿٤﴾ |
| ५) अल्लाहले जसलाई चाहन्छ सहायता दिन्छ । त्यो सर्वशक्ति सम्पन्न, दयावान् छ । | بِنَصْرِ اللّٰهِ ۗ يَنْصُرُ مَنْ يَّشَآءُ ۗ وَهُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿٥﴾ |
| ६) यो अल्लाहको वाचा हो । अल्लाहले आफ्नो वाचाको उल्लङ्घन गर्दैन ! किन्तु अधिकांश मानिसहरूले बुझ्दैनन् । | وَعْدَ اللّٰهِ ۗ لَا يُخْلِفُ اللّٰهُ وَعْدَهٗ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٦﴾ |
| ७) उनीहरूले त सांसारिक जीवनका केवल वाह्य रूप जान्दछन् । र आखिरत (अन्तिमदिन) बाट बिल्कुलै असावधान छन् । | يَعْلَمُوْنَ ظَاهِرًا مِّنَ الْحَيٰوةِ الدُّنْيَا ۚ وَهُمْ عَنِ الْاٰخِرَةِ هُمْ غٰفِلُوْنَ ﴿٧﴾ |
| ८) के उनीहरूले आफ्नो मनमा सोच- | اَوَلَمْ يَتَفَكَّرُوْا فِيْٓ اَنْفُسِهِمْ ۗ مَا خَلَقَ اللّٰهُ السَّمٰوٰتِ |

وَالْأَرْضَ وَمَا بَيْنَهُمَآ إِلَّا بِالْحَقِّ وَأَجَلٍ مُّسَمًّى ۗ
وَإِنَّ كَثِيرًا مِّنَ النَّاسِ بِلِقَآئِ رَبِّهِمْ لَكٰفِرُونَ ﴿٨﴾

विचार गर्दैनन् ? कि अल्लाहले आकाशहरू र धरतीलाई र जे-जति उनीहरूको बीचमा छ, सत्यका साथ एउटा निश्चित अवधिसम्मका लागि मात्र सृष्टि गरेको छ । किन्तु धेरैजसो मानिसहरू त आफ्ना पालनहारको मिलनको कुराबाट इन्कार गर्दछन् ।

أَوَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ
عٰقِبَةُ الَّذِينَ مِن قَبْلِهِمْ ۚ كَانُوٓا أَشَدَّ مِنْهُمْ
قُوَّةً وَأَثَارُوا الْأَرْضَ وَعَمَرُوهَآ أَكْثَرَ مِمَّا
عَمَرُوهَا وَجَآءَتْهُمْ رُسُلُهُم بِالْبَيِّنٰتِ ۖ فَمَا كَانَ اللَّهُ
لِيَظْلِمَهُمْ وَلٰكِن كَانُوٓا أَنفُسَهُمْ يَظْلِمُونَ ﴿٩﴾

९) के उनीहरूले धरतीमा हिड्डुल गरेर यो देखेनन् कि उनीहरूभन्दा पहिला मानिसहरूको कस्तो (नराम्रो) परिणाम भयो ? उनीहरू शक्तिमा यिनीहरूभन्दा बढी बलवान थिए, र उनीहरूले धरतीमा खेतीपाती गरे र यिनीभन्दा अधिक त्यसलाई आबाद गरेका थिए, र उनीहरूको पासमा उनीहरूका रसूलले प्रत्यक्ष प्रमाण लिएर आएका थिए । अल्लाहले उनीहरूमाथि अत्याचार गर्नु त असम्भव थियो । किन्तु उनीहरू स्वयं आफूमाथि अत्याचार गर्दथे ।

ثُمَّ كَانَ عٰقِبَةَ الَّذِينَ أَسٰٓـُٔوا السُّوٓأٰىٓ
أَن كَذَّبُوا بِـَٔايٰتِ اللَّهِ وَكَانُوا بِهَا يَسْتَهْزِءُونَ ﴿١٠﴾

१०) अन्ततः नराम्रो गर्नेहरूको परिणाम नराम्रो भयो, किनभने उनीहरूले अल्लाहका आयतहरूलाई झूठो भनेर उनीहरूको उपहास गर्दथे ।

اللَّهُ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيدُهُۥ ثُمَّ إِلَيْهِ تُرْجَعُونَ ﴿١١﴾

११) अल्लाहले नै सृष्टिको आरम्भ गर्दछ । अनि त्यसैले उसको पुनराबृत्ति गर्नेछ । अनि उसैतिर तिमी फर्कने छौ ।

१२) र जुन दिन कयामत (अन्तिम दिन) आइपुग्नेछ, त्यस दिन अपराधीहरू आश्चर्य चकित भइहाल्नेछन् ।

وَيَوْمَ تَقُومُ السَّاعَةُ يُبْلِسُ الْمُجْرِمُونَ ﴿١٢﴾

१३) र उनीहरूले ठहराएका समस्त साझेदारहरू मध्ये कोही पनि सिफारिश गर्नेवाला हुने छैन र उनीहरू आफै पनि आफ्ना साझेदारहरूलाई अस्वीकार गर्नेछन् ।

وَلَمْ يَكُن لَّهُم مِّن شُرَكَائِهِمْ شُفَعَاءُ وَكَانُوا بِشُرَكَائِهِمْ كَافِرِينَ ﴿١٣﴾

१४) र जुन दिन प्रलय (कयामत) हुनेछ, त्यसदिन उनीहरू (विभिन्न समूह) अलग-अलग भइहाल्नेछन् ।

وَيَوْمَ تَقُومُ السَّاعَةُ يَوْمَئِذٍ يَتَفَرَّقُونَ ﴿١٤﴾

१५) र जसले ईमान ल्याए र असल कर्म गरे, उनीहरू स्वर्गमा प्रसन्नतापूर्वक राखिनेछन् ।

فَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَهُمْ فِي رَوْضَةٍ يُحْبَرُونَ ﴿١٥﴾

१६) तर जुन मानिसहरूले इन्कार गरेका थिए र हाम्रा आयतहरू र आखिरतको साक्षातकारलाई झूठो भनेका थिए उनीहरू सबै यातनामा पर्नेछन् ।

وَأَمَّا الَّذِينَ كَفَرُوا وَكَذَّبُوا بِآيَاتِنَا وَلِقَاءِ الْآخِرَةِ فَأُولَٰئِكَ فِي الْعَذَابِ مُحْضَرُونَ ﴿١٦﴾

१७) यसर्थ जब साँझ पर्छ र जुन बेला बिहान हुन्छ, तिमीहरू सतुति अल्लाहको (तस्बीह) पढ्ने गर ।

فَسُبْحَانَ اللَّهِ حِينَ تُمْسُونَ وَحِينَ تُصْبِحُونَ ﴿١٧﴾

१८) र आकाशहरू र धरतीमा सबै प्रशंसा योग्य उही मात्र छ। अप्रान्हमा पनि र मध्यान्ह पछि पनि (उसको पवित्रताको वर्णन गर) ।

وَلَهُ الْحَمْدُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ وَعَشِيًّا وَحِينَ تُظْهِرُونَ ﴿١٨﴾

१९) उसैले जीवितलाई मृतबाट निकाल्दछ र मृतलाई जीवितबाट र धरतीलाई उसको मृत्यु पश्चात उसैले जीवन

يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَيُحْيِي الْأَرْضَ بَعْدَ مَوْتِهَا ۚ وَكَذَٰلِكَ تُخْرَجُونَ ﴿١٩﴾

प्रदान गर्दछ । यसै प्रकार तिमी पनि पुनः धरतीबाट निकालिने छौ ।

२०) (र यो) उसको निशानीहरूमध्ये हो कि उसले तिमीलाई माटोबाट सृष्टि गऱ्यो । अनि अब तिमी मानिस भई ठाउँ ठाउँमा फैलिराखेका छौ ।

وَمِنۡ اٰيٰتِهٖۤ اَنۡ خَلَقَكُمۡ مِّنۡ تُرَابٍ ثُمَّ اِذَاۤ اَنۡتُمۡ بَشَرٌ تَنۡتَشِرُوۡنَ ﴿٢٠﴾

२१) र (यो पनि) उसको निशानीहरूमध्ये हो कि उसले तिम्रै सहजातिबाट तिम्रो लागि जोडी (स्वास्नीहरू) सृष्टि गऱ्यो, ताकि तिमी उनीबाट आराम प्राप्त गर र उसले तिम्रो बीचमा प्रेम र सहानुभूति सृष्टि गऱ्यो, निश्चयनै यसमा धेरै निशानीहरू छन्, उनको लागि जो सोचविचार गर्दछन् ।

وَمِنۡ اٰيٰتِهٖۤ اَنۡ خَلَقَ لَكُمۡ مِّنۡ اَنۡفُسِكُمۡ اَزۡوَاجًا لِّتَسۡكُنُوۡۤا اِلَيۡهَا وَجَعَلَ بَيۡنَكُمۡ مَّوَدَّةً وَّرَحۡمَةً ؕ اِنَّ فِىۡ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوۡمٍ يَّتَفَكَّرُوۡنَ ﴿٢١﴾

२२) उसको क्षमताका निशानीहरूमध्ये आकाशहरू र धरतीको सृजना र तिम्रो भाषा र तिम्रा रंगहरूको विविधता पनि हो । निःसन्देह यसमा ज्ञानी र चिन्तनशीलहरूको निम्ति धेरै निशानीहरू छन् ।

وَمِنۡ اٰيٰتِهٖ خَلۡقُ السَّمٰوٰتِ وَالۡاَرۡضِ وَاخۡتِلَافُ اَلۡسِنَتِكُمۡ وَاَلۡوَانِكُمۡ ؕ اِنَّ فِىۡ ذٰلِكَ لَاٰيٰتٍ لِّلۡعٰلِمِيۡنَ ﴿٢٢﴾

२३) र उसको शक्तिको निशानीहरूमध्ये राती र दिनको निद्रा पनि हो र उसको अनुग्रह (जीविका) लाई तिमीले तलाश गर्नु पनि हो । निश्चय नै यसमा निशानीहरू छन्, ती मानिसहरूको निम्ति जो सुन्दछन् ।

وَمِنۡ اٰيٰتِهٖ مَنَامُكُمۡ بِالَّيۡلِ وَالنَّهَارِ وَابۡتِغَآؤُكُمۡ مِّنۡ فَضۡلِهٖ ؕ اِنَّ فِىۡ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوۡمٍ يَّسۡمَعُوۡنَ ﴿٢٣﴾

२४) र उसकै निशानीहरूमध्ये एक यो पनि हो कि उसले तिमीलाई बिजुलीको चमक, भय र आशा उत्पन्न गर्नको निम्ति देखाउँछ र आकाशबाट पानी वर्षाउछ। त्यस बाट निर्जीव धरतीलाई जीवन प्रदान गर्दछ। यसमा पनि बुद्धिमानहरूका निम्ति धेरै निशानीहरू छन् ।

وَمِنْ اٰيٰتِهٖ يُرِيْكُمُ الْبَرْقَ خَوْفًا وَّطَمَعًا وَّيُنَزِّلُ مِنَ السَّمَآءِ مَآءً فَيُحْيٖ بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّعْقِلُوْنَ ﴿٢٤﴾

२५) र आर्को निशानी यो पनि छ कि आकाश र धरती उसैको आदेशले कायम छन्। अनि जब उसले तिमीलाई आवाज दिनेछ, तब एउटै आवाजबाट तिमी तुरुन्तै धरतीबाट निस्किहाल्ने छौ ।

وَمِنْ اٰيٰتِهٖٓ اَنْ تَقُوْمَ السَّمَآءُ وَالْاَرْضُ بِاَمْرِهٖ ۗ ثُمَّ اِذَا دَعَاكُمْ دَعْوَةً ۖ مِّنَ الْاَرْضِ اِذَآ اَنْتُمْ تَخْرُجُوْنَ ﴿٢٥﴾

२६) र आकाश र जमीनका सबै कुराहरू उसैका सम्पत्ति हुन र सबै उसैको आदेशको अधीन छन् ।

وَلَهٗ مَنْ فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۗ كُلٌّ لَّهٗ قٰنِتُوْنَ ﴿٢٦﴾

२७) र उही त हो जसले सर्व प्रथम सृष्टिको आरम्भ गर्दछ। अनि उसैले उसको पुनराबृत्ति गर्नेछ। यो उसको निम्ति धेरै सजिलो छ, आकाशहरू र जमीनमा उसको शान (गुण) सर्वोच्च छ र ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।

وَهُوَ الَّذِيْ يَبْدَؤُا الْخَلْقَ ثُمَّ يُعِيْدُهٗ وَهُوَ اَهْوَنُ عَلَيْهِ ۗ وَلَهُ الْمَثَلُ الْاَعْلٰى فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٢٧﴾

२८) अल्लाहले तिम्रो लागि स्वयम् तिम्रो एउटा उदाहरणको वर्णन गरेको छ। जे जति मैले तिमीलाई दिई राखेको छु के तिम्रा दासहरू मध्येका पनि कोही त्यसमा हकदार छ ? कि

ضَرَبَ لَكُمْ مَّثَلًا مِّنْ اَنْفُسِكُمْ ۗ هَلْ لَّكُمْ مِّنْ مَّا مَلَكَتْ اَيْمَانُكُمْ مِّنْ شُرَكَآءَ فِيْ مَا رَزَقْنٰكُمْ فَاَنْتُمْ فِيْهِ سَوَآءٌ تَخَافُوْنَهُمْ كَخِيْفَتِكُمْ اَنْفُسَكُمْ ۗ كَذٰلِكَ نُفَصِّلُ الْاٰيٰتِ لِقَوْمٍ يَّعْقِلُوْنَ ﴿٢٨﴾

तिमी र तिनी त्यसमा बराबर भागीदार छौ ? र तिमीले उनीसित यस्तो डराउँछौ जस्तो तिमी आफ्नै (भाइ-अंशियारहरू) सित डराउँछौ हामीले बुद्धिमानहरूका लागि यस्तै स्पष्ट गरी-गरी आयतहरू वर्णन गर्दछौं ।

بَلِ اتَّبَعَ الَّذِيْنَ ظَلَمُوْٓا اَهْوَآءَهُمْ بِغَيْرِ عِلْمٍ ۚ فَمَنْ يَّهْدِيْ مَنْ اَضَلَّ اللّٰهُ ۭ وَمَا لَهُمْ مِّنْ نّٰصِرِيْنَ ﴿٢٩﴾

२९) अपितु कुरो यो हो कि यी अन्यायीहरू बिना ज्ञान त्यस्तै स्वार्थ पूर्तिमा लागेका छन् । त्यसलाई कसले बाटो (सही बाटो) देखाउन सक्दछ जसलाई अल्लाहले मार्ग विचलित गरिदिन्छन् । यिनीहरूको एउटा पनि मद्दत गर्नेवाला हुँदैन ।

فَاَقِمْ وَجْهَكَ لِلدِّيْنِ حَنِيْفًا ۭ فِطْرَتَ اللّٰهِ الَّتِيْ فَطَرَ النَّاسَ عَلَيْهَا ۭ لَا تَبْدِيْلَ لِخَلْقِ اللّٰهِ ۭ ذٰلِكَ الدِّيْنُ الْقَيِّمُ ڎ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَعْلَمُوْنَ ﴿٣٠﴾

३०) तसर्थ तपाईं दत्तचित्त भएर आफूलाई दीन (इस्लाम) तर्फ लगाउँदै गर्नुस् । अल्लाहको त्यो विशेषता जसमाथि उसले मानिसहरूको सृष्टि गरेको छ । अल्लाहले बनाएको (लाई) नबदल्नु । यही सोझो धर्म हो । तर धेरैले बुझ्दैनन् ।

مُنِيْبِيْنَ اِلَيْهِ وَاتَّقُوْهُ وَاَقِيْمُوا الصَّلٰوةَ وَلَا تَكُوْنُوْا مِنَ الْمُشْرِكِيْنَ ﴿٣١﴾

३१) (मानिसहरू हो !) अल्लाह तर्फ लागेर ऊ सित डर मान्ने गर र नमाज पढ्ने गर र मुश्रिकहरू मध्येबाट नबन्नु ।

مِنَ الَّذِيْنَ فَرَّقُوْا دِيْنَهُمْ وَكَانُوْا شِيَعًا ۭ كُلُّ حِزْبٍۢ بِمَا لَدَيْهِمْ فَرِحُوْنَ ﴿٣٢﴾

३२) उनीहरू मध्येबाट जसले आफ्नो धर्मलाई टुक्रा-टुक्रा गरिदिए र स्वयम् पनि समूह-समूह (मा विभाजित)

भए, प्रत्येक समूह आफूसंग भएको चीज-वस्तुमा प्रसन्न छ ।

وَإِذَا مَسَّ النَّاسَ ضُرٌّ دَعَوْا رَبَّهُم مُّنِيبِينَ إِلَيْهِ
ثُمَّ إِذَا أَذَاقَهُم مِّنْهُ رَحْمَةً إِذَا فَرِيقٌ مِّنْهُم بِرَبِّهِمْ
يُشْرِكُونَ ﴿٣٣﴾

३३) जब मानिसहरूलाई कुनै कष्ट पुगदछ, त आफ्नो पालनकर्ता तर्फ प्रवृत्त भएर प्रार्थना गर्दछन् । अनि जब उसले उनीहरूलाई आफ्नो दयालुताको रसास्वादन गराई दिन्छ तब उनीहरू मध्ये केही मानिसहरूले (एउटा समूहले) आफ्नो पालनकर्ताको साझेदार ठहराउन थाल्दछन् ।

لِيَكْفُرُوا بِمَا آتَيْنَاهُمْ ۚ فَتَمَتَّعُوا فَسَوْفَ تَعْلَمُونَ ﴿٣٤﴾

३४) ताकि उनीहरूले त्यस प्रति अकृतज्ञता देखाऊन् जुन हामीले उनीहरूलाई प्रदान गरेका छौं, ठीकै छ तिमी फाइदा उठाइहाल । अति शीघ्र नै तिमीलाई (परिणाम) थाहा भइहाल्नेछ ।

أَمْ أَنزَلْنَا عَلَيْهِمْ سُلْطَانًا فَهُوَ يَتَكَلَّمُ بِمَا كَانُوا بِهِ
يُشْرِكُونَ ﴿٣٥﴾

३५) के हामीले उनीहरूलाई कुनै यस्तो प्रमाण उतारेका छौं जसले उनलाई स्पष्ट गरी अल्लाहको साथ शिर्क गर्न सिकाउँछ ।

وَإِذَا أَذَقْنَا النَّاسَ رَحْمَةً فَرِحُوا بِهَا ۖ وَإِن تُصِبْهُمْ
سَيِّئَةٌ بِمَا قَدَّمَتْ أَيْدِيهِمْ إِذَا هُمْ يَقْنَطُونَ ﴿٣٦﴾

३६) र जब हामीले मानिसहरूलाई आफ्ना दयालुताको रसास्वादन गराउँदछौं त अत्यन्त खुशी भइहाल्छन् र यदि उनकै हातले गरेको उनीहरूका कर्महरूको कारणले कुनै कष्ट पुग्दछ भने निराश भइहाल्दछन् ।

أَوَلَمْ يَرَوْا أَنَّ اللَّهَ يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ
وَيَقْدِرُ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّقَوْمٍ يُؤْمِنُونَ ﴿٣٧﴾

३७) के उनीहरूले यो देखेनन् कि अल्लाहले नै जसको निम्ति चाहन्छ, जीविकामा विस्तार गरिदिन्छ र

जसको निम्ति चाहन्छ संकुचित गरिदिन्छ । नि:सन्देह यसमा पनि ईमानवालाहरूका निम्ति निशानीहरू छन् ।

فَاٰتِ ذَا الْقُرْبٰى حَقَّهٗ وَالْمِسْكِيْنَ وَابْنَ السَّبِيْلِ ؕ ذٰلِكَ خَيْرٌ لِّلَّذِيْنَ يُرِيْدُوْنَ وَجْهَ اللّٰهِ ؗ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ۝٣٨

३८) तसर्थ नातेदारहरू र निमुखाहरू र बटुवाहरूलाई उनीहरूको हक् दिने गर, जुन मानिसहरू अल्लाहको प्रसन्नताको इच्छुक छन, यो उनीहरूको हकमा राम्रो छ र यिनै मानिसहरू सफलता प्राप्त गर्नेवाला हुन् ।

وَمَآ اٰتَيْتُمْ مِّنْ رِّبًا لِّيَرْبُوَا۠ فِيْٓ اَمْوَالِ النَّاسِ فَلَا يَرْبُوْا عِنْدَ اللّٰهِ ۚ وَمَآ اٰتَيْتُمْ مِّنْ زَكٰوةٍ تُرِيْدُوْنَ وَجْهَ اللّٰهِ فَاُولٰٓئِكَ هُمُ الْمُضْعِفُوْنَ ۝٣٩

३९) तिमीले जुन व्याजमा दिन्छौ, ताकि त्यो मानिसको मालमा शम्मिलित भई बढ्ने गरोस्, त त्यो अल्लाह कहाँ बढ्दैन, तर जुन जकात तिमीले अल्लाहको प्रसन्नता प्राप्त गर्नको निम्ति दियौ, त यस्ता मानिसहरूले नै (अल्लाहकहाँ) आफ्नो मालमा वृद्धि गर्छन् ।

اَللّٰهُ الَّذِيْ خَلَقَكُمْ ثُمَّ رَزَقَكُمْ ثُمَّ يُمِيْتُكُمْ ثُمَّ يُحْيِيْكُمْ ؕ هَلْ مِنْ شُرَكَآئِكُمْ مَّنْ يَّفْعَلُ مِنْ ذٰلِكُمْ مِّنْ شَيْءٍ ؕ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ۝٤٠

४०) अल्लाहनै त हो जसले तिमीलाई सृष्टि गऱ्यो, अनि तिमीलाई जीविका दियो, अनि तिमीलाई उसले मृत्यु दिनेछ अनि तिमीलाई जीवित गर्नेछ । के तिमीले साझेदार ठहराएकाहरू मध्ये पनि कोही यस्तो छ, जसले यी कामहरूमध्ये केही गर्न सकोस् । अल्लाहको लागि पवित्रता र श्रेष्ठता छ उनीहरूका साझेदारहरू भन्दा ।

ظَهَرَ الْفَسَادُ فِي الْبَرِّ وَالْبَحْرِ بِمَا كَسَبَتْ اَيْدِي

४१) थल, र जलमा मानिसहरूका गलत

النَّاسِ لِيُذِيقَهُم بَعْضَ الَّذِي عَمِلُوا لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٤١﴾

क्रियाकलापले गर्दा दंगा फैलिसक्यो ताकि अल्लाहले उनीहरूलाई उनीहरूको करतूतहरूको केहि स्वाद चखाओस् । कदाचित तिनीहरू नराम्रो कामबाट रुकुन् ।

قُلْ سِيرُوا فِي الْأَرْضِ فَانظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِن قَبْلُ ۚ كَانَ أَكْثَرُهُم مُّشْرِكِينَ ﴿٤٢﴾

४२) धरतीमा हिंडडुल गरेर हेर कि जुन मानिसहरू तिमी भन्दा पहिला थिए, उनीहरूको परिणाम कस्तो भयो । उनीहरूमा धेरै जसो मुश्रिक नै थिए ।

فَأَقِمْ وَجْهَكَ لِلدِّينِ الْقَيِّمِ مِن قَبْلِ أَن يَأْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهُ مِنَ اللَّهِ ۖ يَوْمَئِذٍ يَصَّدَّعُونَ ﴿٤٣﴾

४३) अतः तपाईं आफ्नो अनुहार यस सत्य धर्मतिर नै राख्नु होस् यसभन्दा अगाडि कि अल्लाहको तर्फबाट त्यो दिन आइहालोस्, जुन टर्नेवाला छैन । (मानिसहरू) त्यस दिन सबै यताउता (तितर-बित्तर) भइदिन्छन् ।

مَن كَفَرَ فَعَلَيْهِ كُفْرُهُ ۖ وَمَنْ عَمِلَ صَالِحًا فَلِأَنفُسِهِمْ يَمْهَدُونَ ﴿٤٤﴾

४४) जसले इन्कार गर्‍यो त उसको इन्कार उसैको लागि घातक सिद्ध हुनेछ र जसले राम्रो कर्म गरे, उनीहरूले आफ्नै आरामको साधन जुटाइराखेका छन् ।

لِيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِن فَضْلِهِ ۚ إِنَّهُ لَا يُحِبُّ الْكَافِرِينَ ﴿٤٥﴾

४५) ताकि जसले ईमान ल्याए र असल कर्म गरिरहे, उनीहरूलाई अल्लाहले आफ्नो दयालुताले पुरस्कार देओस् । निःसन्देह त्यसले काफिरहरूलाई प्रेम गर्दैन ।

وَمِنْ آيَاتِهِ أَن يُرْسِلَ الرِّيَاحَ مُبَشِّرَاتٍ وَلِيُذِيقَكُم مِّن رَّحْمَتِهِ وَلِتَجْرِيَ الْفُلْكُ بِأَمْرِهِ وَلِتَبْتَغُوا مِن فَضْلِهِ وَلَعَلَّكُمْ تَشْكُرُونَ ﴿٤٦﴾

४६) र उसका निशानीहरू मध्ये शुभ समाचार दिन हावा चलाउनु पनि हो । जसबाट उसले तिमीलाई आफ्नो

दयालुताको स्वाद चखाओस् र ताकि उसको आदेशबाट डुंगाहरू चलुन्, र ताकि तिमीले उसको अनुग्रह (जीविका) खोज, र त्यस हेतु तिमीले कृतज्ञता प्रकट गर ।

وَلَقَدْ اَرْسَلْنَا مِنْ قَبْلِكَ رُسُلًا اِلٰى قَوْمِهِمْ فَجَآءُوْهُمْ بِالْبَيِّنٰتِ فَانْتَقَمْنَا مِنَ الَّذِيْنَ اَجْرَمُوْا ؕ وَكَانَ حَقًّا عَلَيْنَا نَصْرُ الْمُؤْمِنِيْنَ ﴿٤٧﴾

४७) र हामीले तपाईं भन्दा पहिला पनि रसूलहरूलाई (संदेशवाहकहरूलाई) उनीहरूको जातिबन्धुतिर पठायौं, र उनीहरूले तिनीहरूको पासमा खुल्ला प्रमाणहरू लिएर आए अनि अपराधीहरूबाट हामीले प्रतिशोध लियौं। (तसर्थ) जुन मानिसहरूले ईमान ल्याए तिनीहरूको सहायता गर्नु हामीलाई जरुरी थियो ।

اَللّٰهُ الَّذِيْ يُرْسِلُ الرِّيٰحَ فَتُثِيْرُ سَحَابًا فَيَبْسُطُهٗ فِي السَّمَآءِ كَيْفَ يَشَآءُ وَيَجْعَلُهٗ كِسَفًا فَتَرَى الْوَدْقَ يَخْرُجُ مِنْ خِلٰلِهٖ ۚ فَاِذَآ اَصَابَ بِهٖ مَنْ يَّشَآءُ مِنْ عِبَادِهٖٓ اِذَا هُمْ يَسْتَبْشِرُوْنَ ﴿٤٨﴾

४८) अल्लाहले नै वायुहरूलाई चलाउँछ उनीहरूले बादललाई उठाउँछन्, अनि जुन प्रकारले चाहन्छ उनीहरूलाई आकाशमा फिंजाइदिन्छ र तिनीहरूलाई विभिन्न पत्रहरू र टुक्राहरूको रूप दिन्छ। अनि तपाईंले देख्नु हुन्छ कि तिनीहरूको बीचबाट वर्षाका बूँदहरू झर्छन् । अनि जसलाई चाहन्छ त्यस सेवकमाथि पानी वर्षाउँछ, तब उनीहरू प्रसन्न भइहाल्छन् ।

وَاِنْ كَانُوْا مِنْ قَبْلِ اَنْ يُّنَزَّلَ عَلَيْهِمْ مِّنْ قَبْلِهٖ لَمُبْلِسِيْنَ ﴿٤٩﴾

४९) निश्चित मान्नुस् कि वर्षा हुनुभन्दा अगाडि उनीहरू निराश भइराखेका थिए ।

فَانْظُرْ اِلٰىٓ اٰثٰرِ رَحْمَتِ اللّٰهِ كَيْفَ يُحْيِ الْاَرْضَ

५०) अतः तपाईंले अल्लाहको दयालुताका

بَعۡدَ مَوۡتِهَآۚ إِنَّ ذَٰلِكَ لَمُحۡيِ ٱلۡمَوۡتَىٰۖ وَهُوَ عَلَىٰ كُلِّ شَيۡءٖ قَدِيرٞ ٥٠

लक्षणहरू हेर्नुस् कि त्यसले कुन प्रकारले पृथ्वीलाई उसको मृत्यु पश्चात जीवित गर्दछ, निश्चयनै उसैले मृतहरूलाई जीवित पार्नेवाला हो र ऊ प्रत्येक कुरामाथि सामर्थ्यवान छ ।

وَلَئِنۡ أَرۡسَلۡنَا رِيحٗا فَرَأَوۡهُ مُصۡفَرّٗا لَّظَلُّواْ مِنۢ بَعۡدِهِۦ يَكۡفُرُونَ ٥١

५१) र, यदि हामीले एउटा आँधीवेरी पठाउँछौं (जसको प्रभावबाट) त्यस खेतीलाई पहेलो भएको देख्छन्, तब यस पश्चात उनीहरूले कृतध्नता प्रकट गर्न थाल्छन् ।

فَإِنَّكَ لَا تُسۡمِعُ ٱلۡمَوۡتَىٰ وَلَا تُسۡمِعُ ٱلصُّمَّ ٱلدُّعَآءَ إِذَا وَلَّوۡاْ مُدۡبِرِينَ ٥٢

५२) निःसन्देह तपाईले मृतकहरूलाई (कुरा) सुनाउन सक्नुहुन्न र न बहिराहरूलाई आफ्नो आवाज सुनाउन सक्नु हुन्छ, जब कि उनीहरू पिठ्यू फर्काएर मुडिसकेका छन् ।

وَمَآ أَنتَ بِهَٰدِ ٱلۡعُمۡيِ عَن ضَلَٰلَتِهِمۡۖ إِن تُسۡمِعُ إِلَّا مَن يُؤۡمِنُ بِـَٔايَٰتِنَا فَهُم مُّسۡلِمُونَ ٥٣

५३) र न त तपाई अन्धाहरूलाई उनीहरूको मार्ग विचलनबाट (निकालेर) सोझो बाटोमा ल्याउन सक्नु हुन्छ । तपाईंले मात्र उनीहरूलाई सुनाउन सक्नुहुन्छ, जसले हाम्रा आयतहरूमाथि ईमान राख्दछन्, तसर्थ तिनीहरू नै आज्ञाकारी हुन् ।

۞ٱللَّهُ ٱلَّذِي خَلَقَكُم مِّن ضَعۡفٖ ثُمَّ جَعَلَ مِنۢ بَعۡدِ ضَعۡفٖ قُوَّةٗ ثُمَّ جَعَلَ مِنۢ بَعۡدِ قُوَّةٖ ضَعۡفٗا وَشَيۡبَةٗۚ يَخۡلُقُ مَا يَشَآءُۚ وَهُوَ ٱلۡعَلِيمُ ٱلۡقَدِيرُ ٥٤

५४) अल्लाह नै हो, जसले तिमीलाई निर्वल सृष्टि गर्‍यो, अनि निर्वलता पश्चात् शक्ति प्रदान गर्‍यो, अनि शक्ति पश्चात निर्वलता र बृद्धावस्था दियो । (त्यसले) जे चाहन्छ सृष्टि

गर्दछ, ऊ सबै जान्नेवाला र सबैमाथि सामर्थ्यवान छ ।

وَيَوْمَ تَقُومُ السَّاعَةُ يُقْسِمُ الْمُجْرِمُونَ ۙ مَا لَبِثُوا غَيْرَ سَاعَةٍ ۚ كَذَٰلِكَ كَانُوا يُؤْفَكُونَ ﴿٥٥﴾

५५) र जुन दिन क़यामत (प्रलयको अन्तिम दिन) आइपुग्नेछ, त्यतिखेर अपराधीहरूले शपथ खानेछन् कि उनीहरू यस दुनियाँमा एक घडी भन्दा बढी रहेनन्, यसै प्रकारले उनीहरू भ्रमित नै रहे ।

وَقَالَ الَّذِينَ أُوتُوا الْعِلْمَ وَالْإِيمَانَ لَقَدْ لَبِثْتُمْ فِي كِتَابِ اللَّهِ إِلَىٰ يَوْمِ الْبَعْثِ ۖ فَهَٰذَا يَوْمُ الْبَعْثِ وَلَٰكِنَّكُمْ كُنْتُمْ لَا تَعْلَمُونَ ﴿٥٦﴾

५६) तर जुन मानिसहरूलाई ज्ञान र ईमान प्रदान गरिएको थियो, उनीहरूले भन्नेछन् कि अल्लाहको किताब अनुसार तिमी कयामतसम्म रहेका छौ र यो कयामतको दिननै हो, तर तिमीलाई त यसको विश्वासै थिएन ।

فَيَوْمَئِذٍ لَا يَنْفَعُ الَّذِينَ ظَلَمُوا مَعْذِرَتُهُمْ وَلَا هُمْ يُسْتَعْتَبُونَ ﴿٥٧﴾

५७) अतः त्यस दिन अत्याचारीहरूलाई उनीहरूको बहाना-सफाई कुनै काम आउने छैन, र उनीहरूबाट तौबा (प्रायश्चित) र कर्म पनि स्वीकार गरिने छैन ।

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِي هَٰذَا الْقُرْآنِ مِنْ كُلِّ مَثَلٍ ۚ وَلَئِنْ جِئْتَهُمْ بِآيَةٍ لَيَقُولَنَّ الَّذِينَ كَفَرُوا إِنْ أَنْتُمْ إِلَّا مُبْطِلُونَ ﴿٥٨﴾

५८) निःसंदेह हामीले मानिसहरूका समक्ष यस कुरआनमा हर प्रकारका उदाहरणहरू वर्णन गरिदिएका छौं, तपाईंले उनीहरूको अगाडि कुनै पनि निशानी प्रस्तुत गर्नुस्, यी काफिरहरूले भनिहाल्नेछन् कि तिमी झूठा हौ ।

كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ قُلُوبِ الَّذِينَ لَا يَعْلَمُونَ ﴿٥٩﴾

५९) यसै प्रकार अल्लाहले ती मानिसहरूको हृदयमा जो बुझ्दैनन् छाप लगाई दिन्छ ।

فَاصْبِرْ إِنَّ وَعْدَ اللّٰهِ حَقٌّ وَّلَا يَسْتَخِفَّنَّكَ الَّذِينَ لَا يُوقِنُونَ ﴿٦٠﴾

६०) अतः तपाईं धैर्य गर्नुस् निःसन्देह अल्लाहको वाचा सत्य छ र तपाईंलाई उनीहरूले जसले ईमान राख्दैनन्, असंतोषी नबनाइदेऊन् ।



# सूरतु लुक़्मान-३१



सूरतु लुक़्मान मक्की हो, यसमा ३४ आयतहरू र ४ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

الٓمّٓ ①

१) अलिफ-लाम-मीम्,

تِلْكَ اٰيٰتُ الْكِتٰبِ الْحَكِيْمِ ②

२) यो तत्वज्ञानले परिपूर्ण किताबका आयतहरू हुन् ।

هُدًى وَّرَحْمَةً لِّلْمُحْسِنِيْنَ ③

३) जो राम्रो काम गर्नेवालाको निम्ति मार्गदर्शन र कृपा हो ।

الَّذِيْنَ يُقِيْمُوْنَ الصَّلٰوةَ وَيُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ يُوْقِنُوْنَ ④

४) जसले नमाजको आयोजन गर्छन् र जकात दिन्छन् र आखिरत (अन्तिमदिन) माथि आस्था राख्दछन् ।

اُولٰٓئِكَ عَلٰى هُدًى مِّنْ رَّبِّهِمْ وَاُولٰٓئِكَ هُمُ الْمُفْلِحُوْنَ ⑤

५) यिनै हुन् जो आफ्नो पालनकर्ताको तर्फबाट सत्य मार्गमा छन् र तिनै सफल हुनेछन् ।

وَمِنَ النَّاسِ مَنْ يَّشْتَرِيْ لَهْوَ الْحَدِيْثِ لِيُضِلَّ عَنْ سَبِيْلِ اللّٰهِ بِغَيْرِ عِلْمٍ وَّيَتَّخِذَهَا هُزُوًا اُولٰٓئِكَ لَهُمْ عَذَابٌ مُّهِيْنٌ ⑥

६) र कोही यस्ता पनि छन्, जसले कपोल कल्पित कुराहरू किन्दछन्, ताकि मानिसहरूलाई अज्ञानताका साथ अल्लाहको मार्गबाट विचलित गरुन् र त्यसको उपहास गरुन । यी नै हुन् जसका निम्ति अपमानजनक यातना छ ।

وَاِذَا تُتْلٰى عَلَيْهِ اٰيٰتُنَا وَلّٰى مُسْتَكْبِرًا كَاَنْ لَّمْ يَسْمَعْهَا كَاَنَّ فِيْٓ اُذُنَيْهِ وَقْرًا فَبَشِّرْهُ بِعَذَابٍ اَلِيْمٍ ⑦

७) जब उसको सामु हाम्रा आयतहरूलाई सुनाइन्छ तब घमण्डले यसरी मुख फर्काइहाल्छ, जस्तोकि सुनेकै छैन, मानौ उनका कानहरूमा बिर्को लागेका

छन्, तसर्थ उसलाई तपाईंले दुःखद यातनाको सूचना सुनाई दिनुस् ।

८) निःसन्देह जसले ईमान ल्याए र असल कामहरू गरिरहे, उनीहरूको निम्ति उपहार युक्त स्वर्गहरू छन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ جَنّٰتُ النَّعِيْمِ ﴿٨﴾

९) तिनीहरूसधैं त्यसमा बास गर्नेछन् । अल्लाहको यो सत्य वचन हो । जो अत्यन्त सम्मानित र अधिपत्यशाली र तत्वदर्शी छ ।

خٰلِدِيْنَ فِيْهَا ۭ وَعْدَ اللّٰهِ حَقًّا ۭ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٩﴾

१०) उसैले आकाशहरूलाई स्तम्भ बिना सृष्टि गऱ्यो जस्तो तिमीले देख्दछौ, र उसले धरतीमा पहाड स्थापित गरिदियो, ताकि यसले तिमीलाई नहल्लाइदेओस्, र त्यसमा हरेक प्रकारका जनावरहरू फैलाइदियो, र हामीले आकाशबाट पानी बर्षाएर पृथ्वीमा हरेक किसिमका सुन्दर जोडाहरू उत्पादन गऱ्यौं ।

خَلَقَ السَّمٰوٰتِ بِغَيْرِ عَمَدٍ تَرَوْنَهَا وَاَلْقٰى فِي الْاَرْضِ رَوَاسِيَ اَنْ تَمِيْدَ بِكُمْ وَبَثَّ فِيْهَا مِنْ كُلِّ دَاۗبَّةٍ ۭ وَاَنْزَلْنَا مِنَ السَّمَاۗءِ مَاۗءً فَاَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ زَوْجٍ كَرِيْمٍ ﴿١٠﴾

११) यो हो अल्लाहको सृष्टि । अब तिमीहरूले मलाई अल्लाह बाहेक अरु (पूज्यहरू) का कुनै सृष्टि देखाऊ । (त्यस्तो केही छैन) सत्य त यो छ कि यी अत्याचारीहरू स्पष्टरूपले मार्ग विचलित छन् ।

هٰذَا خَلْقُ اللّٰهِ فَاَرُوْنِيْ مَاذَا خَلَقَ الَّذِيْنَ مِنْ دُوْنِهٖ ۭ بَلِ الظّٰلِمُوْنَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿١١﴾

१२) र निश्चय नै हामीले लुक़मान(अ.) लाई कौशल प्रदान गरेका थियौं, कि तिमीले अल्लाह प्रति कृतज्ञता दर्शाऊ र जसले कृतज्ञता प्रकट गर्दछ, त्यो आफ्नो भलोको लागि

وَلَقَدْ اٰتَيْنَا لُقْمٰنَ الْحِكْمَةَ اَنِ اشْكُرْ لِلّٰهِ ۭ وَمَنْ يَّشْكُرْ فَاِنَّمَا يَشْكُرُ لِنَفْسِهٖ ۚ وَمَنْ كَفَرَ فَاِنَّ اللّٰهَ غَنِيٌّ حَمِيْدٌ ﴿١٢﴾

नै गर्दछ । र जसले कृतज्ञता देखाउँदैन ऊ जानिराखोस् कि अल्लाह वास्तवमा निस्पृह र प्रशंसनीय छ ।

१३) र (स्मरण गर) जब लुक़मान(अ.)ले आफ्ना छोरालाई नसीहत गर्दै भने: कि मेरो प्यारो छोरा ! अल्लाहको साथमा कसैलाई साझेदार नठहराऊनु, निश्चय नै शिर्क (बहुदेववाद) ठूलो अत्याचार हो ।

وَإِذْ قَالَ لُقْمَٰنُ لِٱبْنِهِۦ وَهُوَ يَعِظُهُۥ يَٰبُنَيَّ لَا تُشْرِكْ بِٱللَّهِ ۖ إِنَّ ٱلشِّرْكَ لَظُلْمٌ عَظِيمٌ ﴿١٣﴾

१४) र हामीले मानिसलाई उसको आमा-बाबुको सम्बन्धमा सचेत गरेकाछौं, कि यसको आमाले कष्टमाथि कष्ट सहेर उसलाई गर्भमा बोकी राख्छे र दुई वर्षमा उसको दूध छोडाउनु पर्ने हुन्छ ! जसबाट तिमीले मेरो र आफ्नो आमा बाबुको कृतज्ञता प्रकट गर । (किनकि) मतिरै फर्कि आउनु पर्नेछ ।

وَوَصَّيْنَا ٱلْإِنسَٰنَ بِوَٰلِدَيْهِ حَمَلَتْهُ أُمُّهُۥ وَهْنًا عَلَىٰ وَهْنٍ وَفِصَٰلُهُۥ فِى عَامَيْنِ أَنِ ٱشْكُرْ لِى وَلِوَٰلِدَيْكَ إِلَىَّ ٱلْمَصِيرُ ﴿١٤﴾

१५) र यदि ती दुवैले तिमीहरूमाथि यसकुराको दबाव दिन्छन्, कि तिमीले कसैलाई मेरो साथमा साझीदार ठहराऊ जसको तिमीलाई ज्ञान छैन, त उनीहरूको कुरा नमान्नु र सांसारिक कामहरूमा उनीहरूको राम्रो साथ दिनु, र जुन व्यक्ति मतिर प्रवृत्त हुन्छ, उसको मार्गमा हिंड्नु । र तिमी सबैलाई मतिर फर्कि आउनु छ । अनि जुन काम

وَإِن جَٰهَدَاكَ عَلَىٰٓ أَن تُشْرِكَ بِى مَا لَيْسَ لَكَ بِهِۦ عِلْمٌ فَلَا تُطِعْهُمَا ۖ وَصَاحِبْهُمَا فِى ٱلدُّنْيَا مَعْرُوفًا ۖ وَٱتَّبِعْ سَبِيلَ مَنْ أَنَابَ إِلَىَّ ۚ ثُمَّ إِلَىَّ مَرْجِعُكُمْ فَأُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٥﴾

तिमी गरिराखेका हुन्छौ, म तिमीलाई सबै बताउनेछु ।

१६) (लुक़मानले भने कि) प्यारो छोरा ! यदि कुनै कुरा रायोको दाना बराबर होस् र त्यो कुनै चट्टानको बीचमा होस् वा आकाशहरूमा वा धरतीमा होस्, अल्लाहले त्यसलाई उपस्थित गर्नेछ । निःसन्देह अल्लाह अत्यन्त सूक्ष्मदर्शी (र) जानकार पनि छ ।

يٰبُنَيَّ إِنَّهَآ إِن تَكُ مِثْقَالَ حَبَّةٍ مِّنْ خَرْدَلٍ فَتَكُن فِي صَخْرَةٍ أَوْ فِي السَّمٰوٰتِ أَوْ فِي الْأَرْضِ يَأْتِ بِهَا اللّٰهُ ۚ إِنَّ اللّٰهَ لَطِيفٌ خَبِيرٌ ﴿١٦﴾

१७) हे मेरो प्यारो छोरो ! तिमी नमाजको आयोजन गर, भलाईको आदेश दिने गर नराम्रो कर्मबाट रोक र जुनसुकै दुःख पनि तिमीमाथि आइपरे त्यसमा धैर्य राख, निःसन्देह यी अनिवार्य र दृढ संकल्पका काम हुन् ।

يٰبُنَيَّ أَقِمِ الصَّلٰوةَ وَأْمُرْ بِالْمَعْرُوفِ وَانْهَ عَنِ الْمُنكَرِ وَاصْبِرْ عَلٰى مَآ أَصَابَكَ ۖ إِنَّ ذٰلِكَ مِنْ عَزْمِ الْأُمُورِ ﴿١٧﴾

१८) मानिसहरू सम्मुख मुख नफुलाऊ र धरतीमा अहंकार गरी नहिंडनु । निश्चयनै अल्लाहले कुनै अहंकारी र घमण्डीलाई रुचाउँदैन ।

وَلَا تُصَعِّرْ خَدَّكَ لِلنَّاسِ وَلَا تَمْشِ فِي الْأَرْضِ مَرَحًا ۖ إِنَّ اللّٰهَ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُورٍ ﴿١٨﴾

१९) आफ्नो चालमा सहजता र सन्तुलन कायम राख र आफ्नो आवाज नरम राख ! निःसन्देह आवाजहरू मध्ये सबैभन्दा नराम्रो स्वर, गधहाहरूको स्वर हुन्छ ।

وَاقْصِدْ فِي مَشْيِكَ وَاغْضُضْ مِن صَوْتِكَ ۚ إِنَّ أَنكَرَ الْأَصْوَاتِ لَصَوْتُ الْحَمِيرِ ﴿١٩﴾

२०) के तिमीले देखेनौं, कि अल्लाहले, जे जति आकाशहरू र धरतीमा छन्, सबैलाई तिम्रो काममा लगाइराखेको छ र उसले तिमीमाथि आफ्नो

أَلَمْ تَرَوْا أَنَّ اللّٰهَ سَخَّرَ لَكُم مَّا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ وَأَسْبَغَ عَلَيْكُمْ نِعَمَهُ ظٰهِرَةً وَبَاطِنَةً ۗ وَمِنَ النَّاسِ مَن يُجَادِلُ فِي اللّٰهِ بِغَيْرِ عِلْمٍ وَلَا هُدًى وَلَا كِتٰبٍ مُّنِيرٍ ﴿٢٠﴾

प्रत्यक्ष र परोक्ष अनुकम्पाहरू पूरै दिइराखेको छ ? केही मानिसहरूले अल्लाहको विषयमा बिना कुनै ज्ञान, बिना कुनै मार्गदर्शन र बिना कुनै प्रकाशमान किताबको आधारमा, झगडा गर्दछन् ।

وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَا أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَا وَجَدْنَا عَلَيْهِ آبَاءَنَا ۚ أَوَلَوْ كَانَ الشَّيْطَانُ يَدْعُوهُمْ إِلَىٰ عَذَابِ السَّعِيرِ ﴿٢١﴾

२१) र जब उनीहरूसित भनिन्छ, “कि त्यस कुराको अनुशरण गर जुन कि अल्लाहले वह्‌य मार्फत अवतरित गरेको छ”, तब भन्छन् कि “(होइन) बरु हामीले त त्यस कुराको अनुशरण गर्नेछौं, जसमा हामीले आफ्नो बाउ-बाजेलाई पाएका छौं ।” यद्यपि शैतानले उनीहरूलाई नर्कको यातनातिर बोलाउँदछ, (तै पनि?)

وَمَن يُسْلِمْ وَجْهَهُ إِلَى اللَّهِ وَهُوَ مُحْسِنٌ فَقَدِ اسْتَمْسَكَ بِالْعُرْوَةِ الْوُثْقَىٰ ۗ وَإِلَى اللَّهِ عَاقِبَةُ الْأُمُورِ ﴿٢٢﴾

२२) र जसले आज्ञाकारिताका साथ आफूलाई अल्लाहको अधीन गर्दछ र ऊ असल काम गर्ने पनि होओस् त उसले बलियो सहारा समातिहाल्यो । सम्पूर्ण कुराहरूको परिणति अल्लाहतिर नै छ ।

وَمَن كَفَرَ فَلَا يَحْزُنكَ كُفْرُهُ ۚ إِلَيْنَا مَرْجِعُهُمْ فَنُنَبِّئُهُم بِمَا عَمِلُوا ۚ إِنَّ اللَّهَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٢٣﴾

२३) काफिरहरूको इन्कारबाट तपाईं दुःखी नहुनुस् । अन्ततः हाम्रै तर्फ उनीहरूले फर्केर आउनु छ । अनि जे जति उनीहरूले गरिराखेका छन्, हामीहरूले उनीहरूलाई अवगत गराउनेछौं । निःसन्देह अल्लाह (हृदय) छातीभित्र (लुके)को कुरासम्म जान्दछ ।

نُمَتِّعُهُمْ قَلِيلًا ثُمَّ نَضْطَرُّهُمْ إِلَىٰ عَذَابٍ غَلِيظٍ ﴿٢٤﴾

२४) हामीले उनीहरूलाई त्यसै केही फाइदा गराई दिन्छौं । तर (अन्तमा) हामीले उनीहरूलाई विवश पारी एउटा कठोर यातनातिर तानेर लैजानेछौं ।

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ لَيَقُولُنَّ اللَّهُ ۚ قُلِ الْحَمْدُ لِلَّهِ ۚ بَلْ أَكْثَرُهُمْ لَا يَعْلَمُونَ ﴿٢٥﴾

२५) यदि तपाईं उनीहरूसँग सोध्नु हुन्छ कि आकाशहरू र धरतीको सृष्टिकर्ता को हो? त उनीहरूले अवश्य भनिहाल्नेछन्: कि “अल्लाह हो” अनि भनिदिनुस्: कि सबै प्रशंसा पनि अल्लाहकै निम्ति हो ! तर उनीहरू मध्ये धेरै अज्ञानी छन् ।

لِلَّهِ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ ۚ إِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٢٦﴾

२६) जे जति आकाश र धरतीमा छ सबै अल्लाहकै हो निःसन्देह अल्लाह ठूलो निस्पृह, र प्रशंसित छ ।

وَلَوْ أَنَّمَا فِي الْأَرْضِ مِن شَجَرَةٍ أَقْلَامٌ وَالْبَحْرُ يَمُدُّهُ مِن بَعْدِهِ سَبْعَةُ أَبْحُرٍ مَّا نَفِدَتْ كَلِمٰتُ اللَّهِ ۗ إِنَّ اللَّهَ عَزِيزٌ حَكِيمٌ ﴿٢٧﴾

२७) धरतीमा जति रुखहरू छन्, यदि ती सबै कलम भइहालुन् र समस्त समुद्र(का पानी) त्यसका मसी भइहालोस् त्यसपछि सात अन्य समुद्र होऊन् तै पनि अल्लाहका कुराहरू समाप्त हुनसक्ने छैनन् निःसन्देह अल्लाह अत्यन्त अधिपत्यशाली र तत्वदर्शी छ ।

مَّا خَلْقُكُمْ وَلَا بَعْثُكُمْ إِلَّا كَنَفْسٍ وَاحِدَةٍ ۗ إِنَّ اللَّهَ سَمِيعٌ بَصِيرٌ ﴿٢٨﴾

२८) तिमी सबैको सृष्टि गर्नु र तिमी सबैलाई मृत्युपछि पुनः जीवित गर्नु त यस्तो छ, जस्तो कि एउटा जीवलाई सृष्टि गर्नु । निःसन्देह अल्लाह सबै कुरा सुन्दछ, देख्दछ ।

२९) के तपाईं देख्नुहुन्न कि अल्लाहले रातलाई दिनमा प्रविष्ट गर्दछ र दिनलाई रातमा प्रविष्ट गर्दछ ! र उसले सूर्य र चन्द्रलाई आज्ञाकारी बनाइराखेको छ कि प्रत्येक एक निर्धारित समयसम्म चलिराखेको छ । र तिमीले जे जति गर्दछौ, अल्लाह त्यसको पूर्ण जानकारी राख्दछ ।

اَلَمْ تَرَ اَنَّ اللّٰهَ يُوْلِجُ الَّيْلَ فِى النَّهَارِ وَيُوْلِجُ النَّهَارَ فِى الَّيْلِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ كُلٌّ يَّجْرِىْٓ اِلٰٓى اَجَلٍ مُّسَمًّى وَّاَنَّ اللّٰهَ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ﴿٢٩﴾

३०) यी सबै (प्रबन्धहरू) यस कारण छन्, कि अल्लाह नै सत्य हो र उसलाई छाडेर जस जसलाई यिनीहरू पुकार्दछन्, उनीहरू असत्य छन् । र निश्चयनै अल्लाह नै सर्वोच्च र शानवाला छ ।

ذٰلِكَ بِاَنَّ اللّٰهَ هُوَ الْحَقُّ وَاَنَّ مَا يَدْعُوْنَ مِنْ دُوْنِهِ الْبَاطِلُ ۙ وَاَنَّ اللّٰهَ هُوَ الْعَلِىُّ الْكَبِيْرُ ﴿٣٠﴾

३१) के तिमी यसमा विचार गर्दैनौ कि समुद्रमा अल्लाहकै अनुग्रहबाट डुङ्गाहरू चल्छन्, ताकि उसले तिमीहरूलाई आफ्ना केही निशानीहरू देखाओस् । निःसन्देह यसमा प्रत्येक धैर्यवान, र कृतज्ञका निम्ति धेरै निशानीहरू छन् ।

اَلَمْ تَرَ اَنَّ الْفُلْكَ تَجْرِىْ فِى الْبَحْرِ بِنِعْمَتِ اللّٰهِ لِيُرِيَكُمْ مِّنْ اٰيٰتِهٖ ؕ اِنَّ فِىْ ذٰلِكَ لَاٰيٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُوْرٍ ﴿٣١﴾

३२) र जब (समुद्रका) तरङ्गहरूले तिनीहरूलाई छाया-छत्र (पाल) जस्तै छोपी हाल्छन् तब उनले विश्वासका साथ अल्लाहलाई नै पुकार्छन्, अनि जब अल्लाहले उनीहरूलाई बचाएर स्थलसम्म पुऱ्याई दिन्छ, तब उनीहरूमध्ये केही

وَاِذَا غَشِيَهُمْ مَّوْجٌ كَالظُّلَلِ دَعَوُا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۚ فَلَمَّا نَجّٰىهُمْ اِلَى الْبَرِّ فَمِنْهُمْ مُّقْتَصِدٌ ؕ وَمَا يَجْحَدُ بِاٰيٰتِنَآ اِلَّا كُلُّ خَتَّارٍ كَفُوْرٍ ﴿٣٢﴾

मानिसहरू मात्र सन्तुलित मार्गमा हिंडछन्, र हाम्रा आयतहरूको इन्कार ती व्यक्तिहरूले मात्र गर्दछन् जो विश्वासघाती, र कृतघ्न हुन्छन् ।

يَٰٓأَيُّهَا ٱلنَّاسُ ٱتَّقُوا۟ رَبَّكُمْ وَٱخْشَوْا۟ يَوْمًا لَّا يَجْزِى
وَالِدٌ عَن وَلَدِهِۦ وَلَا مَوْلُودٌ هُوَ جَازٍ عَن
وَالِدِهِۦ شَيْـًٔا ۚ إِنَّ وَعْدَ ٱللَّهِ حَقٌّ ۖ فَلَا تَغُرَّنَّكُمُ ٱلْحَيَوٰةُ
ٱلدُّنْيَا وَلَا يَغُرَّنَّكُم بِٱللَّهِ ٱلْغَرُورُ ﴿٣٣﴾

३३) हे मानिसहरू ! आफ्नो पालनकर्तासित डर मान र त्यस दिनसित पनि तर्स जब कि न त बाबु आफ्नो छोराको कुनै काम आउने छ, न त छोरा बाबुको कुनै काम आउने छ । निश्चय नै अल्लाहको वचन सत्य छ । (हेर) सांसारिक जीवनले कदापि तिमीलाई धोकामा नपारोस् । र न त अल्लाहको विषयमा धोकेबाज (शैतान)ले तिमीलाई भ्रममा पारोस् ।

إِنَّ ٱللَّهَ عِندَهُۥ عِلْمُ ٱلسَّاعَةِ وَيُنَزِّلُ ٱلْغَيْثَ
وَيَعْلَمُ مَا فِى ٱلْأَرْحَامِ ۖ وَمَا تَدْرِى نَفْسٌ مَّاذَا
تَكْسِبُ غَدًا ۖ وَمَا تَدْرِى نَفْسٌۢ بِأَىِّ أَرْضٍ
تَمُوتُ ۚ إِنَّ ٱللَّهَ عَلِيمٌ خَبِيرٌۢ ﴿٣٤﴾

३४) निःसन्देह कयामत(अन्तिमदिन) को ज्ञान अल्लाहलाई नै छ । र उसैले जल बृष्टि गराउँछ र उसैले गर्भाष्यहरूमा भएको कुरा जान्दछ (अर्थात नर छ कि मादा) । र कुनै व्यक्तिलाई थाहा छैन कि भोली उसले के गर्नेछ । र कुनै मानिसलाई थाहा छैन कि कुन भू-भागमा उसको मृत्यु हुने छ । (याद राख)अल्लाह नै सबै जान्नेवाला, र प्रत्येक कुरोसित अवगत छ ।



## सूरतुस्सज्दः -३२



सूरतुस्सज्दः मक्की हो, यसमा ३० आयतहरू र ३ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अलिफ-लाम्-मीम्,

الٓمّٓ ۝١

२) यसमा कुनै सन्देह छैन कि यस किताबको अवतरण सम्पूर्ण संसारको पालनकर्ताको तर्फबाट हो ।

تَنْزِيْلُ الْكِتٰبِ لَا رَيْبَ فِيْهِ مِنْ رَّبِّ الْعٰلَمِيْنَ ۝٢

३) के यिनीहरूले भन्छन् कि उसले "(पैगम्बरले) यसलाई स्वयं रचेका हुन् ?" (होइन) बरु त्यो तिम्रो पालनकर्ताको, तर्फबाट सत्य हो, ताकि तपाईंले तिनीहरूलाई सावधान गर्नुस्, जसको पासमा तपाईं भन्दा पहिला कोही सावधान गर्नेवाला आएन । ताकि यिनीहरूले सही मार्ग प्राप्त गर्न सकुन् ।

اَمْ يَقُوْلُوْنَ افْتَرٰىهُ ۚ بَلْ هُوَ الْحَقُّ مِنْ رَّبِّكَ لِتُنْذِرَ قَوْمًا مَّآ اَتٰىهُمْ مِّنْ نَّذِيْرٍ مِّنْ قَبْلِكَ لَعَلَّهُمْ يَهْتَدُوْنَ ۝٣

४) अल्लाह नै त हो जसले आकाशहरू र धरतीलाई र जे जति तिनीहरूको बीचमा छ, सबैलाई छः (६) दिनमा सृष्टि गऱ्यो । अनि सत्तासन(अर्श) माथि उच्च भयो । उस बाहेक तिम्रो लागि कोही मद्दत गर्ने र सिफारिश गर्नेवाला छैन, के तैपनि तिमी नसीहत ग्रहण गर्दैनौ ?

اَللّٰهُ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ ۗ مَا لَكُمْ مِّنْ دُوْنِهٖ مِنْ وَّلِيٍّ وَّلَا شَفِيْعٍ ۗ اَفَلَا تَتَذَكَّرُوْنَ ۝٤

५) उसैले आकाशदेखि धरतीसम्म प्रत्येक

يُدَبِّرُ الْاَمْرَ مِنَ السَّمَآءِ اِلَى الْاَرْضِ ثُمَّ يَعْرُجُ اِلَيْهِ

فِي يَوْمٍ كَانَ مِقْدَارُهُ أَلْفَ سَنَةٍ مِّمَّا تَعُدُّونَ ۝٥

कार्यको व्यवस्था गर्दछ । अनि (सबैकाम) एक यस्तो दिनमा उसतर्फ प्रवृत हुन्छ, जसको गन्ती तिम्रो गणना अनुसार एक हजार वर्ष बराबर हुनेछ ।

ذَٰلِكَ عَالِمُ الْغَيْبِ وَالشَّهَادَةِ الْعَزِيزُ الرَّحِيمُ ۝٦

६) उही त परोक्ष र प्रत्यक्षको ज्ञाता हो सर्वशक्ति सम्पन्न ठूलो दयावान् (अल्लाह) हो ।

الَّذِي أَحْسَنَ كُلَّ شَيْءٍ خَلَقَهُ ۖ وَبَدَأَ خَلْقَ الْإِنسَانِ مِن طِينٍ ۝٧

७) जसले सृष्टि गरेको प्रत्येक कुरोलाई राम्रो बनायो र उसले मानिसको रचना माटोबाट शुरू गऱ्यो ।

ثُمَّ جَعَلَ نَسْلَهُ مِن سُلَالَةٍ مِّن مَّاءٍ مَّهِينٍ ۝٨

८) अनि उसको वंश एक तुच्छ पानीको थोपाले चलायो ।

ثُمَّ سَوَّاهُ وَنَفَخَ فِيهِ مِن رُّوحِهِ ۖ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَارَ وَالْأَفْئِدَةَ ۚ قَلِيلًا مَّا تَشْكُرُونَ ۝٩

९) अनि त्यसलाई ठीक-ठीक गरेर त्यसमा आफ्नो आत्मा संचारित गऱ्यो । उसैले तिम्रो कान आँखा र हृदय बनायो तापनि तिमीले साह्रै कम कृतज्ञता प्रकट गर्दछौ ।

وَقَالُوا أَإِذَا ضَلَلْنَا فِي الْأَرْضِ أَإِنَّا لَفِي خَلْقٍ جَدِيدٍ ۚ بَلْ هُم بِلِقَاءِ رَبِّهِمْ كَافِرُونَ ۝١٠

१०) र उनीहरूले भन्न थाले: कि "जब हामी धरतीमा मिसिइसक्नेछौं त के फेरि नयाँ रूपमा जीवित हुनेछौं ? बरु साँचो कुरा त यो हो कि, यी मानिसहरू आफ्ना पालनकर्तासितको साक्षात्कारलाई नकारी राखेका छन् ।

قُلْ يَتَوَفَّاكُم مَّلَكُ الْمَوْتِ الَّذِي وُكِّلَ بِكُمْ ثُمَّ إِلَىٰ رَبِّكُمْ تُرْجَعُونَ ۝١١

११) भनिदिनुस् ! "कि तिमीलाई मृत्युको स्वर्गदूत (इज्राईल) ले जुन कि तिमीमाथि नियुक्त छ, त्यसले मार्नेछ । अनि तिमी सबै आफ्नो पालनकर्तातिर फर्काइने छौ ।"

१२) कति राम्रो हुन्थ्यो तपाईंले देख्ने भए जब कि अपराधीहरू आफ्नो पालनकर्ताको अगाडि टाउको निहुराई राखेका हुनेछन् र भन्ने छन् कि "हे हाम्रा पालनकर्ता ! हामीले देखिहाल्यौं र सुनीहाल्यौं । अब तिमीले हामीलाई (संसारमा) फिर्ता पठाइदेऊ, ताकि असल कर्म गरौं । हामी आस्था राख्नेवाला हौं ।"

وَلَوْ تَرَىٰٓ إِذِ ٱلْمُجْرِمُونَ نَاكِسُوا۟ رُءُوسِهِمْ عِندَ رَبِّهِمْ رَبَّنَآ أَبْصَرْنَا وَسَمِعْنَا فَٱرْجِعْنَا نَعْمَلْ صَٰلِحًا إِنَّا مُوقِنُونَ ﴿١٢﴾

१३) यदि हामीले चाहेको भए प्रत्येक व्यक्तिलाई नसीहत ग्रहण गराई दिन्थ्यौं, तर मेरो तर्फबाट यो कुरो बिल्कुल सत्य प्रमाणित भइसकेको छ कि म नर्कलाई जिन्न र मानिसहरूबाट, भरी दिनेछु ।

وَلَوْ شِئْنَا لَءَاتَيْنَا كُلَّ نَفْسٍ هُدَىٰهَا وَلَٰكِنْ حَقَّ ٱلْقَوْلُ مِنِّى لَأَمْلَأَنَّ جَهَنَّمَ مِنَ ٱلْجِنَّةِ وَٱلنَّاسِ أَجْمَعِينَ ﴿١٣﴾

१४) (तसर्थ) अब तिमीले त्यस दिनको साक्षात्कारलाई बिर्सेको नतीजा भोग, (आज) हामीले पनि तिमीलाई विर्सि दियौं । र जुन काम तिमीले गर्दथ्यौ त्यसको सजायमा सधैंको यातनाको स्वाद चाखी राख ।

فَذُوقُوا۟ بِمَا نَسِيتُمْ لِقَآءَ يَوْمِكُمْ هَٰذَآ إِنَّا نَسِينَٰكُمْ وَذُوقُوا۟ عَذَابَ ٱلْخُلْدِ بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٤﴾

१५) हाम्रा आयतहरूमा उनैले ईमान ल्याउने गर्दछन् जसलाई जब नसीहत गरिन्छ तब सज्दामा जान्छन् र आफ्ना पालनकर्ताको प्रशंसाका साथ उसको गुणगान गर्दछन् र घमण्ड गर्दैनन् ।

إِنَّمَا يُؤْمِنُ بِـَٔايَٰتِنَا ٱلَّذِينَ إِذَا ذُكِّرُوا۟ بِهَا خَرُّوا۟ سُجَّدًا وَسَبَّحُوا۟ بِحَمْدِ رَبِّهِمْ وَهُمْ لَا يَسْتَكْبِرُونَ ۩ ﴿١٥﴾

१६) उनीहरूका लेटाई आफ्ना ओछ्यानहरूबाट अलग हुन्छन् ।

تَتَجَافَىٰ جُنُوبُهُمْ عَنِ ٱلْمَضَاجِعِ يَدْعُونَ رَبَّهُمْ خَوْفًا وَطَمَعًا وَمِمَّا رَزَقْنَٰهُمْ يُنفِقُونَ ﴿١٦﴾

उनीहरू आफ्नो पालनकर्तालाई भय र आशाले पुकार्दछन् र जुन (सम्पत्ति) हामीले उनलाई दिएका छौं, त्यसबाट खर्च गर्दछन् ।

فَلَا تَعْلَمُ نَفْسٌ مَّآ أُخْفِيَ لَهُم مِّن قُرَّةِ أَعْيُنٍ جَزَآءً بِمَا كَانُوا يَعْمَلُونَ ﴿١٧﴾

१७) (अनि अल्लाह बाहेक) कसैलाई थाहा छैन कि उनीहरूका निम्ति उनको आँखाका शितलता लुकाएर राखिदिएका छौं यो उनीहरूका कर्महरूको पुरस्कार हो, जुन उनीहरूले गर्ने गर्दथे ।

أَفَمَن كَانَ مُؤْمِنًا كَمَن كَانَ فَاسِقًا لَّا يَسْتَوُونَ ﴿١٨﴾

१८) के जो मोमिन छ, ऊ त्यस व्यक्ति सरह हुन सक्छ जो अवज्ञाकारी छ ? दुवै समान हुन सक्दैनन् ।

أَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَلَهُمْ جَنَّاتُ الْمَأْوَىٰ نُزُلًا بِمَا كَانُوا يَعْمَلُونَ ﴿١٩﴾

१९) जसले ईमान ल्याए र असल कर्म गरिरहे, उनीहरूलाई सँधैं बस्नका निम्ति (जन्नत) स्वर्गका बाग बगैंचाहरू छन्, ती कामहरूको प्रतिफलमा आतिथ्यता छ , जुन कि उनीहरूले गर्दथे ।

وَأَمَّا الَّذِينَ فَسَقُوا فَمَأْوَاهُمُ النَّارُ كُلَّمَا أَرَادُوا أَن يَخْرُجُوا مِنْهَا أُعِيدُوا فِيهَا وَقِيلَ لَهُمْ ذُوقُوا عَذَابَ النَّارِ الَّذِي كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٢٠﴾

२०) तर जसले आज्ञा उल्लंघन गरे उनीहरूको ठेगाना नर्क हो । जब कुनै बेला उनले त्यसबाट बाहिर निस्किन चाहनेछन् त त्यसैमा फर्काइनेछन् र (उनीहरूसित) भनिनेछ कि (जुन दोजखको यातनालाई) तिमीले झूठो ठान्दथ्यौ त्यसको बदलामा आगोको सज़ाय चाख ।''

وَلَنُذِيقَنَّهُم مِّنَ الْعَذَابِ الْأَدْنَىٰ دُونَ الْعَذَابِ الْأَكْبَرِ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٢١﴾

२१) र निःसन्देह हामीले उनीहरूलाई (कयामतको) ठूलो सजाय बाहेक

(संसारका) सानो यातनाको स्वाद चखाउने छौं, ताकि कदाचित तिनीहरू (हाम्रो तर्फ) फर्किआऊन् ।

وَمَنْ أَظْلَمُ مِمَّنْ ذُكِّرَ بِآيَاتِ رَبِّهِ ثُمَّ أَعْرَضَ عَنْهَا ۚ إِنَّا مِنَ الْمُجْرِمِينَ مُنْتَقِمُونَ ﴿٢٢﴾

२२) र त्यस व्यक्ति भन्दा बढी अत्याचारी को छ? जसलाई उसको पालनकर्ताका आयातहरूबाट सावधान गरिएको थियो । तैपनि उसले मुख फर्कायो ? निश्चित जान कि हामीले पनि अपराधीहरूसित बदला लिनेवाला छौं ।

وَلَقَدْ آتَيْنَا مُوسَى الْكِتَابَ فَلَا تَكُنْ فِي مِرْيَةٍ مِنْ لِقَائِهِ ۖ وَجَعَلْنَاهُ هُدًى لِبَنِي إِسْرَائِيلَ ﴿٢٣﴾

२३) निःसन्देह हामीले "मूसा(अ.)लाई" किताब प्रदान गऱ्यौं । अतः तपाईंले कदापि ऊ सँगको साक्षात्कारमा सन्देह नगर्नु र हामीले उसलाई इस्राईलका सन्तानको पथप्रदर्शनको माध्यम बनाएका थियौं ।

وَجَعَلْنَا مِنْهُمْ أَئِمَّةً يَهْدُونَ بِأَمْرِنَا لَمَّا صَبَرُوا ۖ وَكَانُوا بِآيَاتِنَا يُوقِنُونَ ﴿٢٤﴾

२४) र जब उनीहरूले धैर्य गरे तब हामीले उनीहरूमध्ये यस्ता नायक बनायौं, जसले हाम्रो आदेशबाट मानिसहरूलाई सही मार्ग देखाउँथे । र हाम्रा आयतहरूमाथि आस्था राख्दथे ।

إِنَّ رَبَّكَ هُوَ يَفْصِلُ بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ يَخْتَلِفُونَ ﴿٢٥﴾

२५) निश्चय नै तिम्रो पालनकर्ताले कयामतका दिन उनीहरूको बीचका ती कुराहरूको निर्णय गर्नेछ, जसमा उनीहरूले विवाद गर्दै आएका छन् ।

أَوَلَمْ يَهْدِ لَهُمْ كَمْ أَهْلَكْنَا مِنْ قَبْلِهِمْ مِنَ الْقُرُونِ يَمْشُونَ فِي مَسَاكِنِهِمْ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ ۖ أَفَلَا يَسْمَعُونَ ﴿٢٦﴾

२६) के यस कुराले पनि तिनीहरूलाई नसीहत दिएन कि उनीहरू भन्दा पहिला कैयन् नस्लहरूलाई

(समूहहरूलाई) हामीले नष्ट गरिसकेका छौं, जसका सहनका ठाउँहरूमा उनीहरू हिंडडुल गर्दैछन् ? यसमा त धेरै निशानीहरू छन् । अनि के उनीहरू सुन्दैनन् ?

२७) के उनीहरूले देख्दैनन् कि हामीले यस बाँझो भूमितिर पानी बगाएर लैजान्छौं । अनि त्यसबाट हामीले खेती उमार्छौं, जसबाट उनीहरूका चौपायाहरू खान्छन् र उनीहरू स्वयम् पनि खान्छन् अनि के यिनीहरूले तैपनि देख्दैनन् ?

أَوَلَمْ يَرَوْا أَنَّا نَسُوقُ الْمَآءَ إِلَى الْأَرْضِ الْجُرُزِ فَنُخْرِجُ بِهِۦ زَرْعًا تَأْكُلُ مِنْهُ أَنْعَٰمُهُمْ وَأَنفُسُهُمْ ۖ أَفَلَا يُبْصِرُونَ ﴿٢٧﴾

२८) र भन्दछन्: कि "यदि तिमी साँचो हौ भने बताऊ यो फैसला कहिले हुनेछ ?

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْفَتْحُ إِن كُنتُمْ صَٰدِقِينَ ﴿٢٨﴾

२९) (हे मुहम्मद स.) भनिदिनुस् ! कि "फैसलाको दिन ईमान ल्याउनुले काफिरहरूलाई कुनै पनि फाइदा पुऱ्याउने छैन र न उनीहरूलाई कुनै मोहलत दिइनेछ ।"

قُلْ يَوْمَ الْفَتْحِ لَا يَنفَعُ الَّذِينَ كَفَرُوٓا إِيمَٰنُهُمْ وَلَا هُمْ يُنظَرُونَ ﴿٢٩﴾

३०) (तसर्थ) अब तपाईले उनीहरूलाई उनीहरूकै अवस्थामा छाडिदिनुस्, र प्रतिक्षा गर्नुस् ! उनीहरू पनि प्रतिक्षक छन् ।

فَأَعْرِضْ عَنْهُمْ وَانتَظِرْ إِنَّهُم مُّنتَظِرُونَ ﴿٣٠﴾



# सूरतुल् अहज़ाब-३३



सूरतुल् अहज़ाब मदनी हो, यसमा ७३ आयतहरू र ९ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

يٰٓاَيُّهَا النَّبِيُّ اتَّقِ اللّٰهَ وَلَا تُطِعِ الْكٰفِرِيْنَ وَالْمُنٰفِقِيْنَ ۭ اِنَّ اللّٰهَ كَانَ عَلِيْمًا حَكِيْمًا ①

१) हे पैगम्बर। अल्लाहसित डराइराख्नुस् र काफिर र मुनाफिकहरूको भनाईमा नलाग्नुस्। निःसंदेह अल्लाह ठूलो सर्वज्ञाता र तत्वदर्शी छ।

وَّاتَّبِعْ مَا يُوْحٰٓى اِلَيْكَ مِنْ رَّبِّكَ ۭ اِنَّ اللّٰهَ كَانَ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ②

२) र अनुशरण त्यस कुराको गर्नु जुन तपाईंको पालनकर्ताको तर्फबाट तपाईंलाई वह्य गरिन्छ। निःसन्देह अल्लाह तपाईंको सबै कर्महरूसित अवगत छ।

وَّتَوَكَّلْ عَلَى اللّٰهِ ۭ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ③

३) र तपाईंले अल्लाहमाथि नै भरोसा गर्नुस्। ऊ भरोसाको निम्ति पर्याप्त छ।

مَا جَعَلَ اللّٰهُ لِرَجُلٍ مِّنْ قَلْبَيْنِ فِيْ جَوْفِهٖ ۚ وَمَا جَعَلَ اَزْوَاجَكُمُ الّٰٓـِٔيْ تُظٰهِرُوْنَ مِنْهُنَّ اُمَّهٰتِكُمْ ۚ وَمَا جَعَلَ اَدْعِيَاۗءَكُمْ اَبْنَاۗءَكُمْ ۭ ذٰلِكُمْ قَوْلُكُمْ بِاَفْوَاهِكُمْ ۭ وَاللّٰهُ يَقُوْلُ الْحَقَّ وَهُوَ يَهْدِي السَّبِيْلَ ④

४) अल्लाहले कुनै व्यक्तिको छाती भित्र दुई मुटु बनाएको छैन र न उसले तिम्रा पत्नीहरूलाई, जसलाई तिमीले आमा भनिहाल्छौ, तिम्रो साँच्चैआमा बनायो, र उसले तिमीले मुखले भनेको छोराहरूलाई वास्तविक छोराहरू बनाएन। यी तिम्रा मुखका कुराहरू हुन्। किन्तु अल्लाहले साँचो कुरा भन्दछ र उसैले सोझो मार्ग देखाउँछ।

५) उनीहरूलाई (धर्मपुत्रलाई) उनीहरूका वास्तविक पिताहरूको नामबाट जोडेर पुकार । अल्लाहकहाँ यही पूरा न्यायसँगत कुरा हो । र यदि तिमीलाई उनीहरूको वास्तविक पिताको ज्ञान छैन भने, धर्ममा उनीहरू तिम्रा धर्मभाइ र मित्र पनि हुन् । यस प्रसंगमा तिमीबाट कुनै भूल वा गल्ती भएको हुन्छ भने, त्यसमा तिमीमाथि कुनै पाप छैन, किन्तु जसको संकल्प तिम्रा हृदयले गरिहाल्यो, त्यसको पाप लाग्दछ । र अल्लाह अत्यन्त क्षमाशील, दयावान छ ।

اُدْعُوْهُمْ لِاٰبَآىِٕهِمْ هُوَ اَقْسَطُ عِنْدَ اللّٰهِ ۚ فَاِنْ لَّمْ تَعْلَمُوْٓا اٰبَآءَهُمْ فَاِخْوَانُكُمْ فِی الدِّیْنِ وَمَوَالِیْكُمْ ؕ وَلَیْسَ عَلَیْكُمْ جُنَاحٌ فِیْمَآ اَخْطَاْتُمْ بِهٖ وَلٰكِنْ مَّا تَعَمَّدَتْ قُلُوْبُكُمْ ؕ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِیْمًا ۝

६) नबीको हक मोमिन माथि स्वयं उनीहरूका आफ्नो (प्राणहरू) भन्दा बढी छ र नबीका पत्नीहरू उनीहरूका (मोमिनहरूका) आमा हुन् ! र अल्लाहको विधान अनुसार, सामान्य मोमिन् र मोहाजिरहरूको अपेक्षा (नबीका) नातेदारहरू आपसमा एक-अर्का सित धेरै हकदार छन् । यो अर्कै कुरा हो कि तिमीलाई आफ्ना साथीहरूसँग राम्रो व्यवहार गर्नुको अनुमति प्राप्त छ । यो आदेश अल्लाहको किताबमा लेखिएको छ ।

اَلنَّبِیُّ اَوْلٰی بِالْمُؤْمِنِیْنَ مِنْ اَنْفُسِهِمْ وَاَزْوَاجُهٗۤ اُمَّهٰتُهُمْ ؕ وَاُولُوا الْاَرْحَامِ بَعْضُهُمْ اَوْلٰی بِبَعْضٍ فِیْ كِتٰبِ اللّٰهِ مِنَ الْمُؤْمِنِیْنَ وَالْمُهٰجِرِیْنَ اِلَّاۤ اَنْ تَفْعَلُوْۤا اِلٰۤی اَوْلِیٰٓىِٕكُمْ مَّعْرُوْفًا ؕ كَانَ ذٰلِكَ فِی الْكِتٰبِ مَسْطُوْرًا ۝

७) (र यादगर) जब हामीले नबीहरूसित वचन लियौं, र खासगरी तपाईंसित र "नूह" र "इब्राहीम" र "मूसा" र मरियमका छोरा "ईसासित"

وَاِذْ اَخَذْنَا مِنَ النَّبِیّٖنَ مِیْثَاقَهُمْ وَمِنْكَ وَمِنْ نُّوْحٍ وَّاِبْرٰهِیْمَ وَمُوْسٰی وَعِیْسَی ابْنِ مَرْیَمَ ۪ وَاَخَذْنَا مِنْهُمْ مِّیْثَاقًا غَلِیْظًا ۝

पनि ! यी सबैसित हामीले दृढ वचन लिऔं ।

لِّيَسْـَٔلَ الصّٰدِقِيْنَ عَنْ صِدْقِهِمْ ۚ وَاَعَدَّ لِلْكٰفِرِيْنَ عَذَابًا اَلِيْمًا ۝٨

८) ताकि अल्लाहले सत्य मानिसहरूसित उनीहरूको सत्यताबारे सोधोस् । र इन्कार गर्नेवालाहरूको निम्ति त उसले दुःखद यातना तयार गरेर राखेको छ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اذْكُرُوْا نِعْمَةَ اللّٰهِ عَلَيْكُمْ اِذْ جَآءَتْكُمْ جُنُوْدٌ فَاَرْسَلْنَا عَلَيْهِمْ رِيْحًا وَّجُنُوْدًا لَّمْ تَرَوْهَا ۭ وَكَانَ اللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرًا ۝٩

९) हे मोमिनहरू ! अल्लाहले जुन भलाई तिमी माथि गऱ्यो, त्यसलाई स्मरण गर जबकि सेनाहरू तिमीमाथि आक्रमणको निम्ति (अहजाब युद्धमा) आए, तब हामीले उनीहरू माथि एक तेज़ हावा पठाइदियौं र यस्ता सेनाहरू पनि, जसलाई तिमीले देख्न सक्दैन थियौ ! र जुन काम तिमीले गर्दछौ, अल्लाहले सबैथोक देखिराखेको छ ।

اِذْ جَآءُوْكُمْ مِّنْ فَوْقِكُمْ وَمِنْ اَسْفَلَ مِنْكُمْ وَاِذْ زَاغَتِ الْاَبْصَارُ وَبَلَغَتِ الْقُلُوْبُ الْحَنَاجِرَ وَتَظُنُّوْنَ بِاللّٰهِ الظُّنُوْنَا ۝١٠

१०) (स्मरण गर) जब शत्रुहरू तिम्रोमाथि-तिरबाट र तिम्रो तलतिरबाट पनि तिमीमाथि आइलागे, र जब आँखाहरू एकटक भइहाले र हृदय कण्ठमा आइपुग्यो ! र तिमीले अल्लाहको बारेमा विभिन्न प्रकारका कल्पनाहरू गर्न थालेका थियौ ।

هُنَالِكَ ابْتُلِيَ الْمُؤْمِنُوْنَ وَزُلْزِلُوْا زِلْزَالًا شَدِيْدًا ۝١١

११) यहाँ ईमानवालाहरू परीक्षणमा परे र तिनीहरू पूरै हल्लाइए ।

وَاِذْ يَقُوْلُ الْمُنٰفِقُوْنَ وَالَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ مَّا وَعَدَنَا اللّٰهُ وَرَسُوْلُهٗٓ اِلَّا غُرُوْرًا ۝١٢

१२) र त्यसबखत जब कपटी र ती मानिसहरू जसका हृदयमा रोग छन् भन्न थाले कि "अल्लाह र उसका

रसूलले हामीसित जुन वचन गरेका थिए त्यो त धोखा मात्र थियो ।''

१३) र उनीहरू मध्येबाटै एउटा समूहले भन्यो: कि हे मदीनावालाहरू ! यहाँ तिम्रो निम्ति ठाउँ छैन, तसर्थ फर्किहाल, र उनको एउटा अर्को समूहले पैगम्बरसित यो भनेर जाने अनुमति माग्न थाल्यो कि “हाम्रा घर असुरक्षित छन्'' । यद्यपि तिनीहरू खुल्ला र असुरक्षित थिएनन्, तर उनीहरू त केवल भाग्न चाहन्थे ।

وَإِذْ قَالَتْ طَّآئِفَةٌ مِّنْهُمْ يَٰٓأَهْلَ يَثْرِبَ لَا مُقَامَ لَكُمْ فَٱرْجِعُوا۟ ۚ وَيَسْتَـْٔذِنُ فَرِيقٌ مِّنْهُمُ ٱلنَّبِىَّ يَقُولُونَ إِنَّ بُيُوتَنَا عَوْرَةٌ وَمَا هِىَ بِعَوْرَةٍ ۖ إِن يُرِيدُونَ إِلَّا فِرَارًا ﴿١٣﴾

१४) र यदि मदीनाको चारैतिरबाट उनीहरूमाथि आक्रमण हुन्थ्यो, अनि त्यसबेला उनीहरूसित उपद्रवको निम्ति भनिएको भए उनीहरूले त्यस्तो गरिहाल्थे र केही बेर बाहेक लड्ने थिएनन् ।

وَلَوْ دُخِلَتْ عَلَيْهِم مِّنْ أَقْطَارِهَا ثُمَّ سُئِلُوا۟ ٱلْفِتْنَةَ لَءَاتَوْهَا وَمَا تَلَبَّثُوا۟ بِهَآ إِلَّا يَسِيرًا ﴿١٤﴾

१५) यद्यपि यस भन्दा पहिला उनीहरूले अल्लाहलाई वचन दिइसकेका थिए कि उनीहरूले पिठ्यू फर्काउने छैनन्, र अल्लाहसित, जुन वचन गरिन्छ, त्यसको अवश्य सोधपूछ हुनेछ ।

وَلَقَدْ كَانُوا۟ عَٰهَدُوا۟ ٱللَّهَ مِن قَبْلُ لَا يُوَلُّونَ ٱلْأَدْبَٰرَ ۚ وَكَانَ عَهْدُ ٱللَّهِ مَسْـُٔولًا ﴿١٥﴾

१६) भनिदिनुस् ! कि “यदि तिमी मर्न वा मारिनुबाट भाग्दछौ त यो भाग्नुबाट तिमीले कदापि लाभ पाउने छैनौ ! र त्यस अवस्थामा पनि तिमीले बहुतै कम फाइदा पाउने छौ ।

قُل لَّن يَنفَعَكُمُ ٱلْفِرَارُ إِن فَرَرْتُم مِّنَ ٱلْمَوْتِ أَوِ ٱلْقَتْلِ وَإِذًا لَّا تُمَتَّعُونَ إِلَّا قَلِيلًا ﴿١٦﴾

१७) सोध्नुस् ! "कि यदि अल्लाहले तिमीमाथि कुनै नराम्रो कुराको विचार गर्दछ वा तिमी माथि कुनै कृपा गर्न चाहन्छ त को छ जसले तिमीलाई त्यसबाट बचाउन सक्दछ, वा तिमीबाट कृपा रोक्न सक्छ, यिनीहरूले अल्लाह बाहेक कसैलाई न आफ्नो मित्र पाउने छन् न सहायक ।

قُلْ مَنْ ذَا الَّذِي يَعْصِمُكُمْ مِنَ اللَّهِ إِنْ أَرَادَ بِكُمْ سُوءًا أَوْ أَرَادَ بِكُمْ رَحْمَةً ۚ وَلَا يَجِدُونَ لَهُمْ مِنْ دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا ﴿١٧﴾

१८) अल्लाहले तिमीहरूमध्ये ती मानिसहरूलाई (राम्ररी) जान्दछ, जसले (युद्धबाट) अरुलाई रोक्दछन् र आफ्ना भाइहरूसित भन्दछन्: कि हाम्रो साथमा आइहाल । र लडाईमा कहिलेकांही मात्र आउँछन् ।

قَدْ يَعْلَمُ اللَّهُ الْمُعَوِّقِينَ مِنْكُمْ وَالْقَائِلِينَ لِإِخْوَانِهِمْ هَلُمَّ إِلَيْنَا ۖ وَلَا يَأْتُونَ الْبَأْسَ إِلَّا قَلِيلًا ﴿١٨﴾

१९) (यी) तिम्रो सहायतामा पूरै कन्जूस्याई गर्दछन् । अनि जब भय र डरको समय आउँछ त तपाईंले उनलाई हेर्नु हुनेछ कि तपाईंतिर हेरिराखेछन्, र उनका आँखाहरू यसरी घुम्छन् जस्तो कि कसैलाई मृत्युको मुर्छा भइराखेको छ । किन्तु जब भय समाप्त हुन्छ तब उनीहरूले आफ्ना तिखो जिब्रोले ठूल ठूला कुरा गर्न थाल्छन् । यिनीहरू धनका धेरै लोभी हुन्छन् । यिनीहरूले ईमान ल्याएकै छैनन् । तसर्थ अल्लाहले उनीहरूको सबै कर्मलाई नाश पारिदिएको छ र यो अल्लाहको लागि धेरै सजिलो छ ।

أَشِحَّةً عَلَيْكُمْ ۖ فَإِذَا جَاءَ الْخَوْفُ رَأَيْتَهُمْ يَنْظُرُونَ إِلَيْكَ تَدُورُ أَعْيُنُهُمْ كَالَّذِي يُغْشَىٰ عَلَيْهِ مِنَ الْمَوْتِ ۖ فَإِذَا ذَهَبَ الْخَوْفُ سَلَقُوكُمْ بِأَلْسِنَةٍ حِدَادٍ أَشِحَّةً عَلَى الْخَيْرِ ۚ أُولَٰئِكَ لَمْ يُؤْمِنُوا فَأَحْبَطَ اللَّهُ أَعْمَالَهُمْ ۚ وَكَانَ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرًا ﴿١٩﴾

२०) उनीहरूले ठानीराखेका छन् कि (शत्रुका) सैन्य-दल अझै गएका छैनन्, र यदि ती सेनाहरू फेरि आउँछन् भने तिनीहरूले चाहन्छन् कि कुनै प्रकार बाहिर (मरुस्थलमा) बद्दूहरूका साथमा भएको भए र त्यहींबाट तिम्रो बारेमा समाचार सोधिराख्ने थिए । र यदि उनीहरू तिम्रो साथमा उपस्थित भएपनि लडाईंमा नाममात्रको नै भाग लिन्थे ।

يَحْسَبُونَ الْأَحْزَابَ لَمْ يَذْهَبُوا ۖ وَإِن يَأْتِ الْأَحْزَابُ يَوَدُّوا لَوْ أَنَّهُم بَادُونَ فِي الْأَعْرَابِ يَسْأَلُونَ عَنْ أَنبَائِكُمْ ۖ وَلَوْ كَانُوا فِيكُم مَّا قَاتَلُوا إِلَّا قَلِيلًا ﴿٢٠﴾

२१) निःसन्देह तिम्रो निम्ति अल्लाहको रसूलमा एउटा उत्तम आदर्श छ, प्रत्येक त्यस व्यक्तिको लागि जसले अल्लाह र अन्तिम दिनको आशा राख्दछ, र अल्लाहलाई अधिक स्मरण गर्दछ ।

لَّقَدْ كَانَ لَكُمْ فِي رَسُولِ اللَّهِ أُسْوَةٌ حَسَنَةٌ لِّمَن كَانَ يَرْجُو اللَّهَ وَالْيَوْمَ الْآخِرَ وَذَكَرَ اللَّهَ كَثِيرًا ﴿٢١﴾

२२) र जब ईमानवालाहरूले (कुफ्फारका) सैन्य दलहरूलाई देखे त भन्न थाले: कि "यसै कुराको वाचा त अल्लाह र उसका रसूलले हामीलाई दिएका थिए । अल्लाह र उसको रसूलले सत्य भनेका थिए । यस कुराले उनीहरूको ईमान र आज्ञाकारीतालाई झनै बढाइदियो ।

وَلَمَّا رَأَى الْمُؤْمِنُونَ الْأَحْزَابَ قَالُوا هَٰذَا مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ وَصَدَقَ اللَّهُ وَرَسُولُهُ ۚ وَمَا زَادَهُمْ إِلَّا إِيمَانًا وَتَسْلِيمًا ﴿٢٢﴾

२३) ईमानवालाहरूमा यस्ता मानिसहरू पनि छन् कि जुन प्रतिज्ञा उनीहरूले अल्लाहसित गरेका थिए त्यसलाई पूरा गरी देखाए । उनीहरूमध्ये केहीले त आफ्ना पूरा गरिसके र

مِّنَ الْمُؤْمِنِينَ رِجَالٌ صَدَقُوا مَا عَاهَدُوا اللَّهَ عَلَيْهِ ۖ فَمِنْهُم مَّن قَضَىٰ نَحْبَهُ وَمِنْهُم مَّن يَنتَظِرُ ۖ وَمَا بَدَّلُوا تَبْدِيلًا ﴿٢٣﴾

उनीहरूमा केही प्रतिक्षामा छन् । र उनीहरूले (आफ्ना कुरा) अलिकति पनि परिवर्तन गरेनन् ।

لِّيَجْزِيَ اللَّهُ الصَّادِقِينَ بِصِدْقِهِمْ وَيُعَذِّبَ الْمُنَافِقِينَ إِن شَاءَ أَوْ يَتُوبَ عَلَيْهِمْ ۚ إِنَّ اللَّهَ كَانَ غَفُورًا رَّحِيمًا ﴿٢٤﴾

२४) ताकि (यसको परिणाम स्वरूप) अल्लाहले सत्य निष्ठहरूलाई उनीहरूको सत्यताको पुरस्कार देओस् र कप्टाचारीलाई चाहन्छ भने यातना देओस् वा उनीहरूको तौबा (प्रायश्चित) स्वीकार गरोस् । अल्लाह बडो क्षमाशील र अति दयावान् छ ।

وَرَدَّ اللَّهُ الَّذِينَ كَفَرُوا بِغَيْظِهِمْ لَمْ يَنَالُوا خَيْرًا ۚ وَكَفَى اللَّهُ الْمُؤْمِنِينَ الْقِتَالَ ۚ وَكَانَ اللَّهُ قَوِيًّا عَزِيزًا ﴿٢٥﴾

२५) र काफीरहरूलाई अल्लाहले रिसाएकै अवस्थामा त्यसै फर्काइदियो तिनीहरूले कुनै भलाई प्राप्त गर्न सकेनन् । अल्लाहले स्वयम् मोमिनहरूका लागि यस युद्धमा प्रयाप्त भयो । अल्लाह त बडो शक्तिमान् र अधिपत्यशाली छ ।

وَأَنزَلَ الَّذِينَ ظَاهَرُوهُم مِّنْ أَهْلِ الْكِتَابِ مِن صَيَاصِيهِمْ وَقَذَفَ فِي قُلُوبِهِمُ الرُّعْبَ فَرِيقًا تَقْتُلُونَ وَتَأْسِرُونَ فَرِيقًا ﴿٢٦﴾

२६) र जुन किताबवालाहरूले उनीहरूको सहायता गरेका थिए, तिनीहरूलाई उनको गढहरूबाट अल्लाहले तल ल्यायो र उनीहरूको हृदयमा भय हालिदियो कि तिमीले उनको एउटा समूहलाई हत्या गर्दैछौ र एउटा समूहलाई बन्दी बनाउँदैछौ ।

وَأَوْرَثَكُمْ أَرْضَهُمْ وَدِيَارَهُمْ وَأَمْوَالَهُمْ وَأَرْضًا لَّمْ تَطَئُوهَا ۚ وَكَانَ اللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرًا ﴿٢٧﴾

२७) र उसले तिमीलाई उनीहरूको जमीन र उनीहरूको घर र उनीहरूको मालसम्पत्तिको उत्तराधिकारी बनाइदियो र त्यस भूभागको पनि जसलाई

तिमीले जीतेका थिएनौ । र अल्लाहलाई हरेक कुराको सामर्थ्य छ ।

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ قُل لِّأَزْوَٰجِكَ إِن كُنتُنَّ تُرِدْنَ ٱلْحَيَوٰةَ ٱلدُّنْيَا وَزِينَتَهَا فَتَعَالَيْنَ أُمَتِّعْكُنَّ وَأُسَرِّحْكُنَّ سَرَاحًا جَمِيلًا ﴿٢٨﴾

२८) हे नबी ! आफ्ना पत्नीहरूसित भनिदिनुस् कि "यदि तिमी सांसरिक जीवन र यसको शोभा लिन चाहन्छौ भने आऊ, म तिमीलाई केही दिएर राम्ररी विदा गरिदेऊँ ।

وَإِن كُنتُنَّ تُرِدْنَ ٱللَّهَ وَرَسُولَهُۥ وَٱلدَّارَ ٱلْءَاخِرَةَ فَإِنَّ ٱللَّهَ أَعَدَّ لِلْمُحْسِنَٰتِ مِنكُنَّ أَجْرًا عَظِيمًا ﴿٢٩﴾

२९) किन्तु यदि तिमीले अल्लाह र उसका रसूल र आखिरतको घर चाहन्छौ भने निश्चय नै अल्लाहले तिमीहरूमध्ये राम्रो काम गर्ने स्त्रहिरूका निम्ति ठूलो प्रतिफल राखिछाडेको छ ।"

يَٰنِسَآءَ ٱلنَّبِيِّ مَن يَأْتِ مِنكُنَّ بِفَٰحِشَةٍ مُّبَيِّنَةٍ يُضَٰعَفْ لَهَا ٱلْعَذَابُ ضِعْفَيْنِ ۚ وَكَانَ ذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرًا ﴿٣٠﴾

३०) हे पैगम्बरका स्त्रीहरू ! तिमीमध्ये जसले पनि कुनै प्रत्यक्ष निर्लज्जताको कर्म गर्नेछ त त्यसका लागि उसलाई दोहोरो यातना हुनेछ र यो अल्लाहको लागि धेरै सरल छ ।

وَمَن يَقْنُتْ مِنكُنَّ لِلَّهِ وَرَسُولِهِۦ وَتَعْمَلْ صَٰلِحًا نُّؤْتِهَآ أَجْرَهَا مَرَّتَيْنِ وَأَعْتَدْنَا لَهَا رِزْقًا كَرِيمًا ﴿٣١﴾

३१) (तर) तिमी मध्ये जो अल्लाह र उसका रसूलप्रति निष्ठापूर्वक आज्ञाकारीताको नीति अपनाउँनेछिन् र असलकर्म गर्दछिन, त्यसलाई हामीले दुईगुणा प्रतिफल प्रदान गर्नेछौं र त्यसको निम्ति हामीले सम्मानपूर्ण आजीविका तयार गरेका छौं ।

يَٰنِسَآءَ ٱلنَّبِيِّ لَسْتُنَّ كَأَحَدٍ مِّنَ ٱلنِّسَآءِ ۚ إِنِ ٱتَّقَيْتُنَّ فَلَا تَخْضَعْنَ بِٱلْقَوْلِ فَيَطْمَعَ ٱلَّذِى فِى قَلْبِهِۦ مَرَضٌ وَقُلْنَ قَوْلًا مَّعْرُوفًا ﴿٣٢﴾

३२) हे नबीका स्त्रीहरू ! तिमीहरू साधारण स्त्रीहरू जस्तो होइनौ, यदि तिमी परहेजगार (संयमी) रहन चाहन्छौ

भने, (व्यक्तिहरूसित) लोचपूर्ण कुरा नगर, कि त्यो व्यक्ति जसको हृदयमा कुनै प्रकारको रोग छ, कुनै नराम्रो विचार गरोस् ! र उनीहरूसित सामान्य रूपमा कुरा गर्ने गर ।

وَقَرْنَ فِي بُيُوتِكُنَّ وَلَا تَبَرَّجْنَ تَبَرُّجَ الْجَاهِلِيَّةِ الْأُولَىٰ وَأَقِمْنَ الصَّلَاةَ وَآتِينَ الزَّكَاةَ وَأَطِعْنَ اللَّهَ وَرَسُولَهُ ۚ إِنَّمَا يُرِيدُ اللَّهُ لِيُذْهِبَ عَنكُمُ الرِّجْسَ أَهْلَ الْبَيْتِ وَيُطَهِّرَكُمْ تَطْهِيرًا ﴿٣٣﴾

३३) र आफ्नो घरमा राम्रो संग बसिराख र विगत अज्ञानकाल जस्तो सज-धज गरी नदेखाऊ । नमाजको आयोजन गर्दै गर जकात दिने गर । र अल्लाह र उसको रसूलको आज्ञा पालन गर । हे पैगम्बरका घरवालीहरू अल्लाह चाहन्छ कि तिमीबाट (सबै प्रकारको) फोहोरलाई टाढा राखोस्, र तिमीलाई पूर्ण रूपले पवित्र राखोस् ।

وَاذْكُرْنَ مَا يُتْلَىٰ فِي بُيُوتِكُنَّ مِنْ آيَاتِ اللَّهِ وَالْحِكْمَةِ ۚ إِنَّ اللَّهَ كَانَ لَطِيفًا خَبِيرًا ﴿٣٤﴾

३४) र तिम्रा घरहरूमा जुन अल्लाहका आयतहरू र रसूलका हदीसहरू पढिन्छन् तिनको चर्चा गर्ने गर । निश्चय नै अल्लाह अत्यन्त सूक्ष्मदर्शी, जानकार छ ।

إِنَّ الْمُسْلِمِينَ وَالْمُسْلِمَاتِ وَالْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ وَالْقَانِتِينَ وَالْقَانِتَاتِ وَالصَّادِقِينَ وَالصَّادِقَاتِ وَالصَّابِرِينَ وَالصَّابِرَاتِ وَالْخَاشِعِينَ وَالْخَاشِعَاتِ وَالْمُتَصَدِّقِينَ وَالْمُتَصَدِّقَاتِ وَالصَّائِمِينَ وَالصَّائِمَاتِ وَالْحَافِظِينَ فُرُوجَهُمْ وَالْحَافِظَاتِ وَالذَّاكِرِينَ اللَّهَ كَثِيرًا وَالذَّاكِرَاتِ أَعَدَّ اللَّهُ لَهُم مَّغْفِرَةً وَأَجْرًا عَظِيمًا ﴿٣٥﴾

३५) बिना सन्देह मुस्लिम पुरुष र मुस्लिम स्त्रीहरू, ईमानवाला पुरुष र ईमानवाली स्त्रीहरू, निष्ठापूर्वक, आज्ञापालन गर्ने पुरुष र निष्ठावान स्त्रीहरू, र सत्यवादी पुरुषहरू र सत्यवादी स्त्रीहरू, धैर्यवान् पुरुषहरू र धैर्य गर्ने स्त्रीहरू, विनम्रता देखाउने पुरुषहरू र विनम्रता देखाउने

स्त्रीहरू, सद्का (दान) दिने पुरुष, र दान दिने स्त्रीहरू, रोजा (व्रत) बस्ने पुरुष र रोजा बस्ने स्त्रीहरू, आफ्ना गुप्ताङ्गहरूको रक्षा गर्ने पुरुष र रक्षा गर्ने स्त्रीहरू र अल्लाहलाई धेरै स्मरण गर्ने पुरुष र स्मरण गर्ने स्त्रीहरू यिनीहरूका निम्ति अल्लाहले क्षमा र ठूलो प्रतिफल तयार गरेको छ ।

وَمَا كَانَ لِمُؤْمِنٍ وَلَا مُؤْمِنَةٍ إِذَا قَضَى اللَّهُ وَرَسُولُهُ أَمْرًا أَن يَكُونَ لَهُمُ الْخِيَرَةُ مِنْ أَمْرِهِمْ ۗ وَمَن يَعْصِ اللَّهَ وَرَسُولَهُ فَقَدْ ضَلَّ ضَلَالًا مُّبِينًا ﴿٣٦﴾

३६) र हेर कुनै मोमिन् पुरुष र मोमिन स्त्रीलाई जब अल्लाहले र उसका रसूलले कुनै कुराको फैसला निर्धारित गरिदिन्छन्, त उनीहरूको यस काममा अन्यथा केही हक बाँकी रहँदैन । जोसुकैले अल्लाह र उसको रसूलको अवज्ञा गर्नेछ, त्यो स्पष्टरूपले मार्ग विचलित भइहाल्यो ।

وَإِذْ تَقُولُ لِلَّذِي أَنْعَمَ اللَّهُ عَلَيْهِ وَأَنْعَمْتَ عَلَيْهِ أَمْسِكْ عَلَيْكَ زَوْجَكَ وَاتَّقِ اللَّهَ وَتُخْفِي فِي نَفْسِكَ مَا اللَّهُ مُبْدِيهِ وَتَخْشَى النَّاسَ وَاللَّهُ أَحَقُّ أَن تَخْشَاهُ ۖ فَلَمَّا قَضَىٰ زَيْدٌ مِّنْهَا وَطَرًا زَوَّجْنَاكَهَا لِكَيْ لَا يَكُونَ عَلَى الْمُؤْمِنِينَ حَرَجٌ فِي أَزْوَاجِ أَدْعِيَائِهِمْ إِذَا قَضَوْا مِنْهُنَّ وَطَرًا ۚ وَكَانَ أَمْرُ اللَّهِ مَفْعُولًا ﴿٣٧﴾

३७) (हे नबी) स्मरण गर्नुस् जबकि तपाईंले त्यस व्यक्तिसँग भनिराख्नु भएको थियो जसमाथि अल्लाहले अनुकम्पा गऱ्यो, र जसमाथि तपाईंले पनि अनुकम्पा गर्नु भयो कि "आफ्नो पत्नीलाई आफूसँग राख र अल्लाहसित डर र तपाईं आफ्नो मनमा त्यस कुरालाई लुकाइराख्नु भएको थियो । जसलाई अल्लाह प्रकट गर्नेवाला थियो । तपाईं मानिसहरूसँग भय खानु हुन्थ्यौ, जबकि अल्लाह त्यस कुराको अधिक हकदार थियो कि

तिमी उसित डर"। अतः जब ज़ैदले ऊसित (स्त्रीसित) आफ्नो आवश्यकता पूरा गरिसक्यो त हामीले तिमीसित उसको विवाह गरिदियौं, ताकि ईमानवालाहरूलाई आफ्ना धर्मपुत्रहरूका पत्नीहरूको सम्बन्धमा कुनै प्रकारको अपठ्यारो नरहोस् जबकि उनीहरूले तिनीहरूसित आफ्नो आवश्यकता पूरा गरिसकेका हुन्छन् । अल्लाहको आदेश त पूरा भएर रहनेछ ।

مَا كَانَ عَلَى النَّبِيِّ مِنْ حَرَجٍ فِيمَا فَرَضَ اللَّهُ لَهُ ۖ سُنَّةَ اللَّهِ فِي الَّذِينَ خَلَوْا مِن قَبْلُ ۚ وَكَانَ أَمْرُ اللَّهِ قَدَرًا مَّقْدُورًا ﴿٣٨﴾

३८) जुन कुराहरू अल्लाहले आफ्नो नबीको लागि निर्धारित गरेको छ, तिनीहरूमा नबीका लागि कुनै हर्ज छैन । अल्लाहको यही स्वीकृत मान्यता ती मानिसहरूको सम्बन्धमा पनि रहेको छ, जुन पहिला गुज्रिसकेका छन् र अल्लाहको आदेश निश्चित भएको हुन्छ ।

الَّذِينَ يُبَلِّغُونَ رِسَالَاتِ اللَّهِ وَيَخْشَوْنَهُ وَلَا يَخْشَوْنَ أَحَدًا إِلَّا اللَّهَ ۗ وَكَفَىٰ بِاللَّهِ حَسِيبًا ﴿٣٩﴾

३९) उनीहरूले अल्लाहको सन्देश पुऱ्याउँदथे र उसैसित डर मान्दथे र अल्लाह बाहेक कसैसित डराउन्नथे । र हिसाब लिनको निम्ति अल्लाह नै प्रयाप्त छ ।

مَّا كَانَ مُحَمَّدٌ أَبَا أَحَدٍ مِّن رِّجَالِكُمْ وَلَٰكِن رَّسُولَ اللَّهِ وَخَاتَمَ النَّبِيِّينَ ۗ وَكَانَ اللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمًا ﴿٤٠﴾

४०) (मानिसहरू हो ! ) तिम्रा पुरुषहरूमध्ये कसैको पिता मोहम्मद(स.) होइनन्, बरु उनी अल्लाहका रसूल र नबीहरूका समापक (अन्तिम नबी) हुन् । र अल्लाहलाई प्रत्येक कुराको पूर्ण ज्ञान छ ।

४१) हे मोमिनहरू ! अल्लाहलाई धेरै स्मरण गर्ने गर ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ ٱذْكُرُوا۟ ٱللَّهَ ذِكْرًا كَثِيرًا ﴿٤١﴾

४२) र बिहान र बेलुका उसको गुणगान गर्ने गर ।

وَسَبِّحُوهُ بُكْرَةً وَأَصِيلًا ﴿٤٢﴾

४३) उही त हो, जसले तिमीमाथि रहमत (कृपा) पठाउँछ र उसका स्वर्गदूतहरूले पनि (तिम्रो लागि शान्ति र अनुकम्पाको प्रार्थना गर्दछन्) ताकि उसले तिमीलाई अँध्यारोबाट निकालेर उज्यालोतिर लगोस् र अल्लाह मोमिनहरूमाथि धेरै कृपालु छ ।

هُوَ ٱلَّذِى يُصَلِّى عَلَيْكُمْ وَمَلَٰٓئِكَتُهُۥ لِيُخْرِجَكُم مِّنَ ٱلظُّلُمَٰتِ إِلَى ٱلنُّورِ ۚ وَكَانَ بِٱلْمُؤْمِنِينَ رَحِيمًا ﴿٤٣﴾

४४) जुन दिन उनीहरू अल्लाहसँग भेट्नेछन्, उनको उपहार (अभिवादन) सलाम हुनेछ र उनीहरूको निम्ति प्रतिष्ठापूर्ण प्रतिफल तयार गरिसकेको छ ।

تَحِيَّتُهُمْ يَوْمَ يَلْقَوْنَهُۥ سَلَٰمٌ ۚ وَأَعَدَّ لَهُمْ أَجْرًا كَرِيمًا ﴿٤٤﴾

४५) हे पैगम्बर ! निश्चय नै हामीले नै तपाईंलाई रसूल बनाएर साक्षी, र शुभसूचना दिनेवाला र सचेत गर्ने वाला बनाएर पठाएका छौं ।

يَٰٓأَيُّهَا ٱلنَّبِىُّ إِنَّآ أَرْسَلْنَٰكَ شَٰهِدًا وَمُبَشِّرًا وَنَذِيرًا ﴿٤٥﴾

४६) र अल्लाहको हुकुमबाट अल्लाहतिर बोलाउनेवाला र प्रकाशमान्, ज्योति बनाएर ।

وَدَاعِيًا إِلَى ٱللَّهِ بِإِذْنِهِۦ وَسِرَاجًا مُّنِيرًا ﴿٤٦﴾

४७) र तपाईंले मोमिनहरूलाई शुभ-सूचना सुनाइदिनुस् कि अल्लाहको तर्फबाट तिनीहरूका लागि ठूलो पुरस्कार (फज़्ल) छ ।

وَبَشِّرِ ٱلْمُؤْمِنِينَ بِأَنَّ لَهُم مِّنَ ٱللَّهِ فَضْلًا كَبِيرًا ﴿٤٧﴾

وَلَا تُطِعِ الْكٰفِرِيْنَ وَالْمُنٰفِقِيْنَ وَدَعْ اَذٰىهُمْ وَتَوَكَّلْ عَلَى اللّٰهِ ؕ وَكَفٰى بِاللّٰهِ وَكِيْلًا ﴿٤٨﴾

४८) र इन्कार गर्नेहरू र कपटीहरूको भनाई नमान्नु । र उनीहरूले दिएको दुःखलाई वास्ता नगर्नु । र अल्लाहमा भरोसा गर्नु ! र अल्लाह कुनै कामलाई पनि परिणाम मुखी बनाउन प्रयाप्त छ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْۤا اِذَا نَكَحْتُمُ الْمُؤْمِنٰتِ ثُمَّ طَلَّقْتُمُوْهُنَّ مِنْ قَبْلِ اَنْ تَمَسُّوْهُنَّ فَمَا لَكُمْ عَلَيْهِنَّ مِنْ عِدَّةٍ تَعْتَدُّوْنَهَا ۚ فَمَتِّعُوْهُنَّ وَسَرِّحُوْهُنَّ سَرَاحًا جَمِيْلًا ﴿٤٩﴾

४९) हे ईमानवालाहरू ! जब तिमी ईमानवाली स्त्रीहरूसँग विवाह गर्दछौ फेरि उनीहरूलाई स्पर्श गर्नुभन्दा अगाडि नै तलाक दिन्छौ भने तिम्रो निम्ति उनीहरूमाथि कुनै इद्दतको अधिकार छैन जसको तिमी गन्ती गर । उनीहरूलाई केही फाइदा (खर्च) दिएर राम्रो तरिकाले बिदा गर ।

يٰۤاَيُّهَا النَّبِيُّ اِنَّاۤ اَحْلَلْنَا لَكَ اَزْوَاجَكَ الّٰتِيْۤ اٰتَيْتَ اُجُوْرَهُنَّ وَمَا مَلَكَتْ يَمِيْنُكَ مِمَّاۤ اَفَآءَ اللّٰهُ عَلَيْكَ وَبَنٰتِ عَمِّكَ وَبَنٰتِ عَمّٰتِكَ وَبَنٰتِ خَالِكَ وَبَنٰتِ خٰلٰتِكَ الّٰتِيْ هَاجَرْنَ مَعَكَ ۫ وَامْرَاَةً مُّؤْمِنَةً اِنْ وَّهَبَتْ نَفْسَهَا لِلنَّبِيِّ اِنْ اَرَادَ النَّبِيُّ اَنْ يَّسْتَنْكِحَهَا ۚ خَالِصَةً لَّكَ مِنْ دُوْنِ الْمُؤْمِنِيْنَ ؕ قَدْ عَلِمْنَا مَا فَرَضْنَا عَلَيْهِمْ فِيْۤ اَزْوَاجِهِمْ وَمَا مَلَكَتْ اَيْمَانُهُمْ لِكَيْلَا يَكُوْنَ عَلَيْكَ حَرَجٌ ؕ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٥٠﴾

५०) हे नबी ! हामीले तपाईको निम्ति ती पत्नीहरू ग्राह्य गरिदिएका छौं जसका महर तपाईंले दिइसक्नु भएको छ, र ती दासीहरूलाई पनि जुन अल्लाहले तपाईंको अधीनमा (धर्मयुद्धबाट) गनिमतको मालको रूपमा दियो र तपाईंको काकाका छोरीहरू र फुफूहरूका छोरीहरू र मामाका छोरीहरू र तपाईंको आमाका दिदी बहिनीका छोरीहरू जसले तपाईको साथमा प्रवास (हिजरत) गरेका छिन् र त्यो ईमानवाली स्त्री जसले आफूलाई नबीको निम्ति अर्पित गर्दछे, यदि नबीले उसित बिहे गर्न चाहनुहुन्छ । त (हे मुहम्मद !) यो खास गरी

तपाईंको लागि हो, सबै मुसलमानहरूको लागि होइन, हामीले उनीहरूका स्त्रीहरू र दासीहरूको बारेमा जुन नियमहरू निर्धारित गरेका छौं, हामीलाई थाहा छ । यो यसकारण कि तपाईंलाई कुनै अप्ठ्यारो नहोस् । र अल्लाह धेरै क्षमाशिल, दयावान् छ ।

५१) यी मध्ये जुन स्त्रीलाई चाहन्छौ अलग्गै राख र जसलाई चाहन्छौ आफ्नो साथमा राख । र कसैलाई तपाईंले अलग्गै राख्नु भएपछि यदि उसलाई फेरि आफ्नो पासमा बोलाउँनु हुन्छ भने तपाईंलाई कुनै पाप (गुनाह) छैन । यो यसकारण कि ती स्त्रीहरूका आँखाहरू शीतल रहुन्, र उनीहरू दुःखी नरहुन् र जे-जति तपाईंले उनलाई दिनु हुन्छ उसलाई लिएर सब सहमत रहुन् र जे-जति तिम्रा हृदयमा छन् अल्लाहलाई त्यसको बारेमा थाहा छ अल्लाह त सर्वज्ञ र धेरै सहनशील छ ।

تُرْجِيْ مَنْ تَشَآءُ مِنْهُنَّ وَتُـْٔوِيْٓ اِلَيْكَ مَنْ تَشَآءُ ۭ وَمَنِ ابْتَغَيْتَ مِمَّنْ عَزَلْتَ فَلَا جُنَاحَ عَلَيْكَ ۭ ذٰلِكَ اَدْنٰٓى اَنْ تَقَرَّ اَعْيُنُهُنَّ وَلَا يَحْزَنَّ وَيَرْضَيْنَ بِمَآ اٰتَيْتَهُنَّ كُلُّهُنَّ ۭ وَاللّٰهُ يَعْلَمُ مَا فِيْ قُلُوْبِكُمْ ۭ وَكَانَ اللّٰهُ عَلِيْمًا حَلِيْمًا ۵۱

५२) (हे पैगम्बर !) यी बाहेक अन्य स्त्रीहरू तपाईंका लागि वैध छैनन् र न यो ठीक छ कि तपाईंले यिनको बदलामा अन्य पत्नीहरू ल्यानुस्, उनको सौन्दर्य राम्रा लागे पनि । उनीहरूको कुरा अर्कै छ जो तिम्रा सम्पत्ति (दासी) हुन् । वास्तवमा अल्लाहको दृष्टि हरेक कुरोमाथि छ ।

لَا يَحِلُّ لَكَ النِّسَاۗءُ مِنْۢ بَعْدُ وَلَآ اَنْ تَبَدَّلَ بِهِنَّ مِنْ اَزْوَاجٍ وَّلَوْ اَعْجَبَكَ حُسْنُهُنَّ اِلَّا مَا مَلَكَتْ يَمِيْنُكَ ۭ وَكَانَ اللّٰهُ عَلٰي كُلِّ شَيْءٍ رَّقِيْبًا ۵۲

५३) हे ईमानवालाहरू नबीको घरमा अनुमति प्राप्त नगरेसम्म खानको लागि नजानु कि पाक्ने बेलासम्म प्रतिक्षा गर्नुपरोस् तर जब निमन्त्रण हुन्छ तब जाऊ र खाना खाइसकेपछि हिँडिहाल र त्यहीं कुराहरूमा अल्झेर नबस । तिम्रो यो कुराले पैगम्बरलाई कष्ट दिन्छ र उनी तिम्रो लिहाज मान्छन्, तर अल्लाह साँचो कुरा गर्न कसैको लिहाज गर्दैन । र जब तिमी नबीका पत्नीहरूसँग केही माँग्दछौ भने उनीहरूसित पर्दाको पछाडिबाट माँग । यो धेरै शुद्धताको कुरा हो, तिम्रा हृदयहरूका लागि र उनीहरूका हृदयका लागि पनि । तिम्रो निम्ति यो कुरा वैध छैन कि, तिमी अल्लाहका रसूललाई दुःख पुऱ्याऊ र न यो वैधछ कि उहाँ (नबी) पश्चात कहिल्यै उनका पत्नीहरूसित विवाह गर । याद राख निश्चय नै अल्लाहको दृष्टिमा यो गम्भीर अपराध हो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تَدْخُلُوا۟ بُيُوتَ ٱلنَّبِىِّ إِلَّآ أَن يُؤْذَنَ لَكُمْ إِلَىٰ طَعَامٍ غَيْرَ نَٰظِرِينَ إِنَىٰهُ وَلَٰكِنْ إِذَا دُعِيتُمْ فَٱدْخُلُوا۟ فَإِذَا طَعِمْتُمْ فَٱنتَشِرُوا۟ وَلَا مُسْتَـْٔنِسِينَ لِحَدِيثٍ ۚ إِنَّ ذَٰلِكُمْ كَانَ يُؤْذِى ٱلنَّبِىَّ فَيَسْتَحْىِۦ مِنكُمْ ۖ وَٱللَّهُ لَا يَسْتَحْىِۦ مِنَ ٱلْحَقِّ ۚ وَإِذَا سَأَلْتُمُوهُنَّ مَتَٰعًا فَسْـَٔلُوهُنَّ مِن وَرَآءِ حِجَابٍ ۚ ذَٰلِكُمْ أَطْهَرُ لِقُلُوبِكُمْ وَقُلُوبِهِنَّ ۚ وَمَا كَانَ لَكُمْ أَن تُؤْذُوا۟ رَسُولَ ٱللَّهِ وَلَآ أَن تَنكِحُوٓا۟ أَزْوَٰجَهُۥ مِنۢ بَعْدِهِۦٓ أَبَدًا ۚ إِنَّ ذَٰلِكُمْ كَانَ عِندَ ٱللَّهِ عَظِيمًا ﴿٥٣﴾

५४) तिमीले चाहे कुनै कुरालाई व्यक्त गर वा त्यसलाई लुकाऊ, अल्लाहलाई त हरेक कुराको ज्ञान छ ।

إِن تُبْدُوا۟ شَيْـًٔا أَوْ تُخْفُوهُ فَإِنَّ ٱللَّهَ كَانَ بِكُلِّ شَىْءٍ عَلِيمًا ﴿٥٤﴾

५५) ती स्त्रीहरूलाई आफ्ना बुबाहरूसित आफ्ना छोराहरूसित, र आफ्ना भाइहरूसित, र आफ्ना भतिजाहरूसित, र आफ्ना भान्जि-हरूसित, र आफ्ना मेलका

لَّا جُنَاحَ عَلَيْهِنَّ فِىٓ ءَابَآئِهِنَّ وَلَآ أَبْنَآئِهِنَّ وَلَآ إِخْوَٰنِهِنَّ وَلَآ أَبْنَآءِ إِخْوَٰنِهِنَّ وَلَآ أَبْنَآءِ أَخَوَٰتِهِنَّ وَلَا نِسَآئِهِنَّ وَلَا مَا مَلَكَتْ أَيْمَٰنُهُنَّ ۗ وَٱتَّقِينَ ٱللَّهَ ۚ إِنَّ ٱللَّهَ كَانَ عَلَىٰ كُلِّ شَىْءٍ شَهِيدًا ﴿٥٥﴾

स्त्रीहरूसित र न उनीहरूसित जसलाई उनीहरूमाथि स्वामित्वको अधिकार प्राप्त छ पर्दा नगर्नुमा कुनै पाप छैन । स्त्रीहरू ! अल्लाहसित डर, निश्चय नै अल्लाह हरेक कुराको साक्षी छ ।

إِنَّ اللَّهَ وَمَلَائِكَتَهُ يُصَلُّونَ عَلَى النَّبِيِّ ۚ يَا أَيُّهَا الَّذِينَ آمَنُوا صَلُّوا عَلَيْهِ وَسَلِّمُوا تَسْلِيمًا ﴿٥٦﴾

५६) अल्लाह र उसका फरिश्ताहरू यस नबीमाथि रहमत (सलाम-शान्ति) पठाउँदछन् । हे ईमानवालाहरू तिमी पनि उनीमाथि धेरै सलाम र दरूद पठाउने गर ।

إِنَّ الَّذِينَ يُؤْذُونَ اللَّهَ وَرَسُولَهُ لَعَنَهُمُ اللَّهُ فِي الدُّنْيَا وَالْآخِرَةِ وَأَعَدَّ لَهُمْ عَذَابًا مُهِينًا ﴿٥٧﴾

५७) जुन मानिसहरूले अल्लाह र उसका रसूललाई दुःख पुऱ्याउँछन्, अल्लाहले उनलाई दुनियाँ र आखिरतमा तिरस्कृत गरेको छ र उनीहरूको निम्ति अपमान जनक यातना तयार गरेको छ ।

وَالَّذِينَ يُؤْذُونَ الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ بِغَيْرِ مَا اكْتَسَبُوا فَقَدِ احْتَمَلُوا بُهْتَانًا وَإِثْمًا مُبِينًا ﴿٥٨﴾

५८) र जुन मासिनहरूले ईमानवाला पुरुषहरू र ईमानवाली स्त्रीहरूलाई, बिना कुनै कारण यस्तो कुराको आरोप लगाएर दुःख पुऱ्याएका छन्, जुनकि उनीहरूले गरेका छैनन्, भने, उनीहरूले त ठूलो मित्थ्यारोपण र प्रत्यक्ष पापको बोझ आफूमाथि उठाएका छन् ।

يَا أَيُّهَا النَّبِيُّ قُلْ لِأَزْوَاجِكَ وَبَنَاتِكَ وَنِسَاءِ الْمُؤْمِنِينَ يُدْنِينَ عَلَيْهِنَّ مِنْ جَلَابِيبِهِنَّ ۚ ذَٰلِكَ أَدْنَىٰ أَنْ يُعْرَفْنَ فَلَا يُؤْذَيْنَ ۗ وَكَانَ اللَّهُ غَفُورًا رَحِيمًا ﴿٥٩﴾

५९) हे पैगम्बर ! आफ्ना पत्नीहरू र आफ्ना छोरीहरू र ईमानवाली स्त्रीहरूसँग भनिदिनुस् कि तिनीहरू आफुमाथि "आफ्ना च्यादर हाल्ने

गरुन्'' । यसबाट छिटै उनीहरू (भद्रता)को पहिचान भइहाल्छ र उनले दुःख भोग्नु पर्दैन र अल्लाह बडो क्षमाशील, दयावान छ ।

६०) यदि अहिले पनि मुनाफिक र ती मानिसहरू, जसको हृदयमा रोग छन् र जसले मदीना (शहरमा) मिथ्या अफवाह फैलाइराखेका छन्, त्यसो गर्न छाडेनन् भने हामीले तपाईलाई उनीहरूको बर्बादीका लागि लगाइदिने छौं, । अनि तिनीहरू केही दिनलाई मात्र तपाईसंग यहाँ रहन सक्ने छन् ।

لَئِنْ لَّمْ يَنْتَهِ الْمُنٰفِقُوْنَ وَالَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ وَّالْمُرْجِفُوْنَ فِي الْمَدِيْنَةِ لَنُغْرِيَنَّكَ بِهِمْ ثُمَّ لَا يُجَاوِرُوْنَكَ فِيْهَآ اِلَّا قَلِيْلًا ۝٦٠

६१) यिनीहरू तिरस्कृत रहनेछन् । जहाँ कहीं भेटिनेछन्, समातिनेछन् र नराम्रो तरिकाले मारिने छन् ।

مَّلْعُوْنِيْنَ ۚ اَيْنَمَا ثُقِفُوْٓا اُخِذُوْا وَقُتِّلُوْا تَقْتِيْلًا ۝٦١

६२) अल्लाहको यहि रीति ती मानिसहरूको विषयमा पनि रहेको छ जो पहिला गुज्रिसकेका छन् ! र तपाईंले अल्लाहको रीतिमा कहिल्यै परिवर्तन पाउने छैनौ ।

سُنَّةَ اللّٰهِ فِي الَّذِيْنَ خَلَوْا مِنْ قَبْلُ ۚ وَلَنْ تَجِدَ لِسُنَّةِ اللّٰهِ تَبْدِيْلًا ۝٦٢

६३) मानिसहरूले तपाईंसँग कयामतको (समय) बारेमा सोध्छन् । भनिदिनुस् ''यसको ज्ञान त अल्लाहलाई मात्र छ र तपाईलाई के थाहा ? शायद कयामत नजिकै आइपुगेको छ'' ।

يَسْـَٔلُكَ النَّاسُ عَنِ السَّاعَةِ ۗ قُلْ اِنَّمَا عِلْمُهَا عِنْدَ اللّٰهِ ۗ وَمَا يُدْرِيْكَ لَعَلَّ السَّاعَةَ تَكُوْنُ قَرِيْبًا ۝٦٣

६४) अल्लाहले इन्कार गर्नेहरूलाई अभिशप्त गरेको छ र उनीहरूको

اِنَّ اللّٰهَ لَعَنَ الْكٰفِرِيْنَ وَاَعَدَّ لَهُمْ سَعِيْرًا ۝٦٤

निम्ति (जहन्नमको) आगो तयार गरिराखेको छ ।

خٰلِدِيْنَ فِيْهَآ اَبَدًا ۚ لَا يَجِدُوْنَ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿٦٥﴾

६५) जसमा उनीहरू सधैं सधैं रहनेछन् । उनीहरूले त्यहाँ कुनै समर्थक र सहायक पाउने छैनन् ।

يَوْمَ تُقَلَّبُ وُجُوْهُهُمْ فِى النَّارِ يَقُوْلُوْنَ يٰلَيْتَنَآ اَطَعْنَا اللّٰهَ وَاَطَعْنَا الرَّسُوْلَا ﴿٦٦﴾

६६) त्यस दिन उनीहरूका अनुहार आगोमा उल्टाइने, पल्टाइनेछ त उनीहरूले भन्नेछन् : "कति राम्रो हुनथ्यो यदि हामीले अल्लाहको आज्ञा पालन गरेको भए र रसूलका आज्ञा पालन गरेको भए" ।

وَقَالُوْا رَبَّنَآ اِنَّآ اَطَعْنَا سَادَتَنَا وَكُبَرَآءَنَا فَاَضَلُّوْنَا السَّبِيْلَا ﴿٦٧﴾

६७) र उनीहरूले भन्नेछन् "हे हाम्रा पालनकर्ता ! वास्तवमा हामीले आफ्ना नाइकेहरू र आफ्ना ठूला बडाको आज्ञा पालन गर्‍यौं र उनीहरूले हामीलाई सही मार्गबाट विचलित गरिदिए ।"

رَبَّنَآ اٰتِهِمْ ضِعْفَيْنِ مِنَ الْعَذَابِ وَالْعَنْهُمْ لَعْنًا كَبِيْرًا ﴿٦٨﴾

६८) हे हाम्रा स्वामी ! "उनीहरूलाई तिमी दोहोरो यातना देऊ र उनीहरूलाई ठूलो तिरस्कृत गर" ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَكُوْنُوْا كَالَّذِيْنَ اٰذَوْا مُوْسٰى فَبَرَّاَهُ اللّٰهُ مِمَّا قَالُوْا ۗ وَكَانَ عِنْدَ اللّٰهِ وَجِيْهًا ﴿٦٩﴾

६९) हे मोमिनहरू ! "तिमीहरू ती मानिसहरू जस्तो नहुनु, जसले मूसा (अ.) लाई (दोष लगाएर) दुःख पुर्‍याए, तर अल्लाहले उनलाई दोषरहित प्रमाणित गर्‍यो । उनी अल्लाह कहाँ सम्मानित भएका थिए" ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَقُوْلُوْا قَوْلًا سَدِيْدًا ﴿٧٠﴾

७०) हे मोमिनहरू ! अल्लाहसित डर मान्ने गर र सोझो सोझो साँचो कुरा भन्ने गर ।

يُّصْلِحْ لَكُمْ اَعْمَالَكُمْ وَيَغْفِرْ لَكُمْ ذُنُوْبَكُمْ ۗ وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ فَقَدْ فَازَ فَوْزًا عَظِيْمًا ﴿٧١﴾

७१) ताकि अल्लाह तिम्रा कर्महरूलाई राम्रो पारोस् र तिम्रा पापहरूलाई क्षमा गरिदेओस् । र जसले पनि अल्लाह र उसको रसूलको आज्ञा पालन गऱ्यो, त्यसले ठूलो सफलता प्राप्त गरिसक्ने छ ।

اِنَّا عَرَضْنَا الْاَمَانَةَ عَلَى السَّمٰوٰتِ وَالْاَرْضِ وَالْجِبَالِ فَاَبَيْنَ اَنْ يَّحْمِلْنَهَا وَاَشْفَقْنَ مِنْهَا وَحَمَلَهَا الْاِنْسَانُ ۗ اِنَّهٗ كَانَ ظَلُوْمًا جَهُوْلًا ﴿٧٢﴾

७२) हामीले आफ्नो नासोलाई आकाशहरू र धरती र पर्वतहरूमाथि प्रस्तुत गऱ्यौं, तर उनीहरूले त्यसलाई उठाउन इन्कार गरिदिए र त्यससित तर्सिहाले । (तर) मानिसले त्यसलाई उठाइहाल्यो । (निश्चय नै ऊ) ठूलो अत्याचारी र अज्ञानी छ ।

لِّيُعَذِّبَ اللّٰهُ الْمُنٰفِقِيْنَ وَالْمُنٰفِقٰتِ وَالْمُشْرِكِيْنَ وَالْمُشْرِكٰتِ وَيَتُوْبَ اللّٰهُ عَلَى الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ۗ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿٧٣﴾

७३) यो यस कारण कि अल्लाहले कपटी पुरुषहरू, स्त्रीहरू र बहुदेववादी पुरुषहरू र बहुदेववादी स्त्रीहरूलाई सजाय देओस्, र ईमानवाला पुरुषहरू र ईमानवाली स्त्रीहरूको प्रायश्चित स्वीकार गरोस् । अल्लाह बडो क्षमाशील र दयालु छ ।



## सूरतु सबा-३४




सूरतु सबा मक्की हो, यसमा ५४ आयतहरू र ६ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) सम्पूर्ण प्रशंसा अल्लाहका लागि हुन् । जो कि स्वामी हो, ती सबै कुराको जुन आकाशहरूमा छन् र जे धरतीमा छ। र आखिरतमा पनि उसैको लागि प्रशंसा छ। र ऊ ठूलो तत्वदर्शी र सर्वज्ञ छ ।

اَلْحَمْدُ لِلّٰهِ الَّذِيْ لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي
الْاَرْضِ وَلَهُ الْحَمْدُ فِي الْاٰخِرَةِ ۚ
وَهُوَ الْحَكِيْمُ الْخَبِيْرُ ۝١

२) जो धरती मुनि जान्छ र जो त्यसबाट बाहिर निस्कन्छ र जेजति आकाशबाट तल झर्छ, र जो जति त्यसमाथि चढ्छ (उक्लन्छ) ऊ सबै जान्दछ र ऊ अत्यन्त दयालु क्षमाशील छ ।

يَعْلَمُ مَا يَلِجُ فِي الْاَرْضِ وَمَا يَخْرُجُ مِنْهَا
وَمَا يَنْزِلُ مِنَ السَّمَآءِ وَمَا يَعْرُجُ فِيْهَا ۚ
وَهُوَ الرَّحِيْمُ الْغَفُوْرُ ۝٢

३) काफिरहरूले भन्दछन्: कि क़ियामतको समय "हामीमाथि आउँदैन" । तपाई भनिदिनुस् मलाई मेरो पालनकर्ताको कसम , त्यो तिमीहरूमाथि अवश्य आउनेछ । अल्लाहलाई जो अर्न्तयामी छ अदृश्यको ज्ञान छ, कण बराबरको सानो तिनो कुरा पनि उसबाट लुकेको छैन, आकाशहरूमा र न त धरतीमा नत त्यो भंदा सानो कुनै कुरा र न ठूलो। सबै कुराहरू स्पष्ट किताबमा अंकित छन् ।

وَقَالَ الَّذِيْنَ كَفَرُوْا لَا تَاْتِيْنَا السَّاعَةُ ۚ قُلْ بَلٰى
وَرَبِّيْ لَتَاْتِيَنَّكُمْ ۙ عٰلِمِ الْغَيْبِ ۚ لَا يَعْزُبُ عَنْهُ مِثْقَالُ
ذَرَّةٍ فِي السَّمٰوٰتِ وَلَا فِي الْاَرْضِ وَلَآ اَصْغَرُ مِنْ
ذٰلِكَ وَلَآ اَكْبَرُ اِلَّا فِيْ كِتٰبٍ مُّبِيْنٍ ۝٣

لِّيَجْزِيَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ ۚ أُولَٰئِكَ لَهُم مَّغْفِرَةٌ وَرِزْقٌ كَرِيمٌ ﴿٤﴾

४) ताकि उसले उनीहरूलाई राम्रो पुरस्कार देओस्, जसले ईमान ल्याए र असल कर्म गर्दैरहे । यिनै हुन् जसको निम्ति क्षमा र सम्मानित जीविका छ ।

وَالَّذِينَ سَعَوْ فِي آيَاتِنَا مُعَاجِزِينَ أُولَٰئِكَ لَهُمْ عَذَابٌ مِّن رِّجْزٍ أَلِيمٌ ﴿٥﴾

५) र जसले हाम्रा आयातहरूलाई मात गर्न प्रयास गरे, तिनै हुन् जसको निम्ति साह्रै नै नराम्रो प्रकारको दुःखद् यातना छ ।

وَيَرَى الَّذِينَ أُوتُوا الْعِلْمَ الَّذِي أُنزِلَ إِلَيْكَ مِن رَّبِّكَ هُوَ الْحَقَّ وَيَهْدِي إِلَىٰ صِرَاطِ الْعَزِيزِ الْحَمِيدِ ﴿٦﴾

६) र जसलाई ज्ञान छ, उनीहरूले स्वयम् देख्नेछन् कि जे जति तपाईंको पालनहारको तर्फबाट तपाईतिर अवतरित भएको छ, त्यही नै सत्य हो, र अल्लाह जो सर्वशक्ति सम्पन्न, र विशेषता वाला छ तिनलाई सोझो मार्ग देखाउँछ ।

وَقَالَ الَّذِينَ كَفَرُوا هَلْ نَدُلُّكُمْ عَلَىٰ رَجُلٍ يُنَبِّئُكُمْ إِذَا مُزِّقْتُمْ كُلَّ مُمَزَّقٍ إِنَّكُمْ لَفِي خَلْقٍ جَدِيدٍ ﴿٧﴾

७) र काफिरहरूले भने (आऊ) "हामीले तिमीलाई एउटा यस्तो मानिसको बारेमा भनौं, जसले तिमीलाई यो खबर दिइरहेछ कि जब तिमी बिल्कुलै नष्ट भई सक्नेछौ तब फेरि तिमी पुनः जीवित हुनेछौ" ?

أَفْتَرَىٰ عَلَى اللَّهِ كَذِبًا أَم بِهِ جِنَّةٌ ۗ بَلِ الَّذِينَ لَا يُؤْمِنُونَ بِالْآخِرَةِ فِي الْعَذَابِ وَالضَّلَالِ الْبَعِيدِ ﴿٨﴾

८) (हामी भन्दैनौं कि) के उसले अल्लाहमाथि झूठो दोषारोपण गरेको छ, वा त्यसलाई केही उन्माद छ ? वास्तविकता यो छ जुन मानिसहरूले आखिरतमा विश्वास गर्दैनन्, उनीहरू सजाय पाउने वाला र मार्ग विचलनमा छन् ।

९) के उनीहरूले आफ्ना अगाडि पछाडि आकाश र धरतीलाई देखेनन् ? हामीले चाहेको अवस्थामा उनीहरूलाई धरतीमा (धंसाउन) गाड्न सक्छौं वा उनीमाथि आकाशबाट केही टुक्राहरू खसाल्न सक्छौं । निश्चय नै यसमा एउटा प्रमाण छ, प्रत्येक त्यस मानिसलाई जो हृदयबाट प्रवृत्त हुन्छ ।

१०) र हामीले दाऊद (अ.) माथि आफ्नो तर्फबाट कृपा गरेका छौं : "हे पर्वतहरू उसको साथमा गुणगानलाई प्रतिध्वनित गर, र पंक्षीहरू तिमीहरूले पनि" । र हामीले उसको निम्ति फलामलाई नरम बनाइदियौं ।

११) ताकि तिमी "पूरा कवचहरू बनाई हाल र कडीहरूलाई सही अनुमानले जोड ।" र तिमी सबै राम्रो कर्म गर । निश्चित मान कि जे-जति तिमीले गर्दैछौ, त्यसलाई म देख्दैछु ।

१२) र "सुलैमानको" निम्ति हामीले वायुलाई बशीभूत गरिदिएका थियौं । यसको बिहानको अभिष्ट एक महिनाको बाटो हुन्थ्यो र साँझको अभिष्ट पनि (एक महिनाको थियो) र हामीले उसको निम्ति पग्लेको ताँबाको स्रोत बगाइदियौं र जिन्नहरूमध्येबाट पनि केहीलाई

أَفَلَمْ يَرَوْا إِلَىٰ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُم مِّنَ السَّمَاءِ وَالْأَرْضِ ۚ إِن نَّشَأْ نَخْسِفْ بِهِمُ الْأَرْضَ أَوْ نُسْقِطْ عَلَيْهِمْ كِسَفًا مِّنَ السَّمَاءِ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَةً لِّكُلِّ عَبْدٍ مُّنِيبٍ ﴿٩﴾

وَلَقَدْ آتَيْنَا دَاوُودَ مِنَّا فَضْلًا ۖ يَا جِبَالُ أَوِّبِي مَعَهُ وَالطَّيْرَ ۖ وَأَلَنَّا لَهُ الْحَدِيدَ ﴿١٠﴾

أَنِ اعْمَلْ سَابِغَاتٍ وَقَدِّرْ فِي السَّرْدِ ۖ وَاعْمَلُوا صَالِحًا ۖ إِنِّي بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿١١﴾

وَلِسُلَيْمَانَ الرِّيحَ غُدُوُّهَا شَهْرٌ وَرَوَاحُهَا شَهْرٌ ۖ وَأَسَلْنَا لَهُ عَيْنَ الْقِطْرِ ۖ وَمِنَ الْجِنِّ مَن يَعْمَلُ بَيْنَ يَدَيْهِ بِإِذْنِ رَبِّهِ ۖ وَمَن يَزِغْ مِنْهُمْ عَنْ أَمْرِنَا نُذِقْهُ مِنْ عَذَابِ السَّعِيرِ ﴿١٢﴾

(उसको बशीभूत गरिदिएका थियौं) । जसले आफ्नो पालनकर्ताको अनुज्ञाले उसको अगाडि काम गर्दथे । (आदेश थियो) : “कि उनीहरूमध्ये जसले हाम्रो आदेशको उल्लंघन गर्दछ उसलाई हामीले प्रज्वलित आगोको स्वाद चखाउनेछौं” ।

يَعْمَلُونَ لَهُ مَا يَشَاءُ مِن مَّحَارِيبَ وَتَمَاثِيلَ وَجِفَانٍ كَالْجَوَابِ وَقُدُورٍ رَّاسِيَاتٍ ۚ اعْمَلُوا آلَ دَاوُودَ شُكْرًا ۚ وَقَلِيلٌ مِّنْ عِبَادِيَ الشَّكُورُ ﴿١٣﴾

१३) सुलैमानले चाहेको कुरा जिन्नातहरूले तयार गर्दथे । उदाहरणको लागि किलाहरू र प्रतिमाहरू र ठूलो डेक्चीजस्ता तलाब र चूल्होमा अडी रहने डेक्ची । हे दाऊदका सन्तति मेरो कृतज्ञता ज्ञापन गर्न असल कर्म गर ! र मेरा सेवकहरूमा कृतज्ञता ज्ञापन गर्नेहरू थोरै हुन्छन्” ।

فَلَمَّا قَضَيْنَا عَلَيْهِ الْمَوْتَ مَا دَلَّهُمْ عَلَىٰ مَوْتِهِ إِلَّا دَابَّةُ الْأَرْضِ تَأْكُلُ مِنسَأَتَهُ ۖ فَلَمَّا خَرَّ تَبَيَّنَتِ الْجِنُّ أَن لَّوْ كَانُوا يَعْلَمُونَ الْغَيْبَ مَا لَبِثُوا فِي الْعَذَابِ الْمُهِينِ ﴿١٤﴾

१४) अनि जब हामीले उनको मृत्युको निम्ति आदेश दियौं त ती जिन्नहरूलाई उसको मृत्युको समाचार कसैले दिएन घुन कीरा बाहेक जसले उसको लठ्ठीलाई खाइराखेको थियो । अनि जब उनी खसिहाले, तब जिन्नहरूले थाहा पाए कि यदि उनी परोक्षका कुरा जान्नेवाला भएको भए यस अपमानजनक यातनामा परिराख्ने थिएनन् ।

لَقَدْ كَانَ لِسَبَإٍ فِي مَسْكَنِهِمْ آيَةٌ ۖ جَنَّتَانِ عَن يَمِينٍ وَشِمَالٍ ۖ كُلُوا مِن رِّزْقِ رَبِّكُمْ وَاشْكُرُوا لَهُ ۚ بَلْدَةٌ طَيِّبَةٌ وَرَبٌّ غَفُورٌ ﴿١٥﴾

१५) सबाका जाति बन्धुको लागि उनीहरूको निवासस्थानमा नै अल्लाहको शक्तिको एउटा निशानी थियो । उनको बायाँ र दायाँ

दुईवटा बगैचा थिए हामीले उनलाई आदेश दिएका थियौं कि "आफ्नो पालनकर्ताले दिएको जीविका खाऊ, र उसप्रति आभार प्रकट गर। यो शहर पनि राम्रो र पालनकर्ता पनि क्षमाशील" छ।

१६) किन्तु तिनीहरूले ध्यान दिएनन् अनि हामीले उनीहरूमाथि ठूलो बाढी पठाइदियौं र उनीहरूको दुईटै बगैंचाको सट्टामा उनीहरूलाई दुइटा अर्कै बगैंचाहरू दियौं, जसका फलहरू बेस्वाद थिए र जसमा केही झ्याउ थिए र केही झरबयरहरू थिए।

فَأَعْرَضُوا فَأَرْسَلْنَا عَلَيْهِمْ سَيْلَ الْعَرِمِ وَبَدَّلْنَاهُم بِجَنَّتَيْهِمْ جَنَّتَيْنِ ذَوَاتَيْ أُكُلٍ خَمْطٍ وَأَثْلٍ وَشَيْءٍ مِّن سِدْرٍ قَلِيلٍ ﴿١٦﴾

१७) यो प्रतिफल हामीले उनीहरूलाई उनीहरूको अवज्ञाको कारणले दियौं। यस्तो प्रतिफल त हामीले ठूला ठूला कृतघ्न मानिसलाई नै दिन्छौं।

ذَٰلِكَ جَزَيْنَاهُم بِمَا كَفَرُوا ۖ وَهَلْ نُجَازِي إِلَّا الْكَفُورَ ﴿١٧﴾

१८) र हामीले उनीहरूको र ती बस्तीहरूको बीचमा जसलाई हामीले बरकत (पुरस्कार) दिएका थियौं केही अरु बस्तीहरू अबाद गरायौं जुन सार्वजनिक रूपले प्रकट थिए र तिनीहरूमा उनमा यात्राका अभिष्टहरू ठीक अनुमानमा राख्यौं : "उनीहरूमा रातदिन निश्चिन्त भई हिंडडुल गर।"

وَجَعَلْنَا بَيْنَهُمْ وَبَيْنَ الْقُرَى الَّتِي بَارَكْنَا فِيهَا قُرًى ظَاهِرَةً وَقَدَّرْنَا فِيهَا السَّيْرَ ۖ سِيرُوا فِيهَا لَيَالِيَ وَأَيَّامًا آمِنِينَ ﴿١٨﴾

१९) किन्तु उनीहरूले भने: "हे हाम्रा पालनकर्ता हाम्रा यात्राहरूलाई दूरस्थ बनाई देऊ। उनीहरूले स्वयम्

فَقَالُوا رَبَّنَا بَاعِدْ بَيْنَ أَسْفَارِنَا وَظَلَمُوا أَنفُسَهُمْ فَجَعَلْنَاهُمْ أَحَادِيثَ وَمَزَّقْنَاهُمْ كُلَّ مُمَزَّقٍ ۚ إِنَّ فِي ذَٰلِكَ لَآيَاتٍ لِّكُلِّ صَبَّارٍ شَكُورٍ ﴿١٩﴾

आफूमाथि नै आफ्नो कुभलो गरे । त्यसकारण हामीले (उनीहरूलाई नष्ट गरेर) उनीहरूका कथा बनाइदियौं, र उनीहरूलाई बिल्कुल छिन्न भिन्न गरिदियौं । निश्चय नै यसमा प्रत्येक ठूलो धैर्यवान्, कृतज्ञको निम्ति धेरै शिक्षाहरू छन् ।

وَلَقَدْ صَدَّقَ عَلَيْهِمْ إِبْلِيسُ ظَنَّهُۥ فَٱتَّبَعُوهُ إِلَّا فَرِيقًا مِّنَ ٱلْمُؤْمِنِينَ ﴿٢٠﴾

२०) र इबलीसले (शैताको नायक) उनको विषयमा आफ्नो अनुमान सत्य साबित गरेर देखाई दियो र ईमानवालाहरूको एउटा समूह बाहेक उनीहरू सबै उसैको अनुयायी बने ।

وَمَا كَانَ لَهُۥ عَلَيْهِم مِّن سُلْطَٰنٍ إِلَّا لِنَعْلَمَ مَن يُؤْمِنُ بِٱلْءَاخِرَةِ مِمَّنْ هُوَ مِنْهَا فِى شَكٍّ ۗ وَرَبُّكَ عَلَىٰ كُلِّ شَىْءٍ حَفِيظٌ ﴿٢١﴾

२१) यद्यपि शैतानको उनीहरूमाथि कुनै जोड र दबाव थिएन, किन्तु यो यसकारण कि हामीले उनीहरूलाई जो आखिरतमाथि ईमान राख्दछन् प्रकट गरौं उनीहरूबाट जो उसको बारेमा कुनै सन्देहमा परिराखेका छन् । र तपाईंको पालनहार प्रत्येक कुराको संरक्षक छ ।

قُلِ ٱدْعُوا۟ ٱلَّذِينَ زَعَمْتُم مِّن دُونِ ٱللَّهِ ۖ لَا يَمْلِكُونَ مِثْقَالَ ذَرَّةٍ فِى ٱلسَّمَٰوَٰتِ وَلَا فِى ٱلْأَرْضِ وَمَا لَهُمْ فِيهِمَا مِن شِرْكٍ وَمَا لَهُۥ مِنْهُم مِّن ظَهِيرٍ ﴿٢٢﴾

२२) भनिदिनुस् "कि अल्लाहबाहेक जस-जसलाई तिमीले (पूज्य) ठान्दछौ, तिनीहरू सबलाई पुकारेर हेर । तिनीहरूमध्ये कसैलाई आकाशहरूमा र पृथ्वीमा एउटा कण भरी पनि कुनै कुराको अधिकार छैन र न ती दुवैमा उनको कुनै साझेदारी छ र न उनीहरूमध्ये कुनै उसको सहायक छ" ।

२३) उस कहाँ कसैको सिफारिश लाग्दैन, किन्तु उसको मात्र जसलाई उसले अनुमति दिएको छ । यहाँसम्म कि जब उनका हृदयहरूबाट घबराहट समाप्त गरिन्छ, त तिनीहरूले सोध्छन्: कि “तिम्रो पालनकर्ताले के भन्यो” ? (फरिश्ताहरूले) जवाफ दिन्छन् कि “सत्य भनेको छ ! र त्यो अत्यन्त उच्च र महान् छ” ।

وَلَا تَنفَعُ الشَّفَاعَةُ عِندَهُ إِلَّا لِمَنْ أَذِنَ لَهُ ۚ حَتَّىٰ
إِذَا فُزِّعَ عَن قُلُوبِهِمْ قَالُوا مَاذَا قَالَ رَبُّكُمْ ۖ
قَالُوا الْحَقَّ ۖ وَهُوَ الْعَلِيُّ الْكَبِيرُ ﴿٢٣﴾

२४) सोध्नुस् कि “तिमीलाई आकाशहरूबाट र धरतीबाट कसले जीविका प्रदान गर्दछ” ? स्वयम् जवाफ दिनुस् “कि अल्लाह” । हेर हामी वा तिमी या त सोझो बाटोमा छौं, वा खुल्लमखुल्ला मार्ग विचलनमा ।

قُلْ مَن يَرْزُقُكُم مِّنَ السَّمَاوَاتِ وَالْأَرْضِ ۖ قُلِ اللَّهُ ۖ
وَإِنَّا أَوْ إِيَّاكُمْ لَعَلَىٰ هُدًى أَوْ فِي ضَلَالٍ مُّبِينٍ ﴿٢٤﴾

२५) भन्नुस् कि “जुन अपराध हामीले गरेका छौं, त्यसबापत सोधपूछ तिमीसित हुनेछैन र न त त्यस कुराको सोधपूछ हामीसित हुनेछ जुन तिमीले गरिराखेका छौ ।”

قُل لَّا تُسْأَلُونَ عَمَّا أَجْرَمْنَا وَلَا نُسْأَلُ عَمَّا تَعْمَلُونَ ﴿٢٥﴾

२६) तिनलाई खबर गरिदिनुस् कि “हाम्रो पालनकर्ताले हामी सबैलाई एकत्रित गर्नेछ अनि “हाम्रो बीच ठीक-ठीक फैसला गरिदिनेछ । उही नै राम्रो फैसला गर्नेवाला र अत्यन्त ज्ञानवान् छ” ।

قُلْ يَجْمَعُ بَيْنَنَا رَبُّنَا ثُمَّ يَفْتَحُ بَيْنَنَا بِالْحَقِّ
وَهُوَ الْفَتَّاحُ الْعَلِيمُ ﴿٢٦﴾

२७) भन्नुस् “मलाई पनि उनीहरूलाई देखाऊ, जसलाई तिमीले साझेदार बनाई अल्लाहसँग संलग्न गरेका

قُلْ أَرُونِيَ الَّذِينَ أَلْحَقْتُم بِهِ شُرَكَاءَ ۖ كَلَّا ۚ
بَلْ هُوَ اللَّهُ الْعَزِيزُ الْحَكِيمُ ﴿٢٧﴾

छौ ।'' कोही होइन, बरु उही (एक्लो) अल्लाह अत्यन्त अधिपत्यशाली, तत्वदर्शी छ ।

२८) (हे मोहम्मद स.अ.) हामीले तपाईंलाई सबै मानिसहरूको लागि शुभ-सूचना दिनेवाला र सावधान गर्नेवाला बनाएर पठाएका हौं, किन्तु यो सत्य हो कि धेरै मानिसहरूले बुझ्दैनन् ।

وَمَآ أَرْسَلْنَٰكَ إِلَّا كَآفَّةً لِّلنَّاسِ بَشِيرًا وَنَذِيرًا وَلَٰكِنَّ أَكْثَرَ ٱلنَّاسِ لَا يَعْلَمُونَ ٢٨

२९) सोध्छन् कि यदि तिमी साँचो हौ भने यो (कयामतको) वचन कहिले पूरा हुनेछ'' ?

وَيَقُولُونَ مَتَىٰ هَٰذَا ٱلْوَعْدُ إِن كُنتُمْ صَٰدِقِينَ ٢٩

३०) जवाफ दिनुस् कि त्यसको निम्ति एक विशेष दिनको अवधि निर्धारित छ, जसबाट न एकछिन तिमी पछि हट्ने छौ न अगाडि बढ्नेछौ'' ।

قُل لَّكُم مِّيعَادُ يَوْمٍ لَّا تَسْتَـْٔخِرُونَ عَنْهُ سَاعَةً وَلَا تَسْتَقْدِمُونَ ٣٠

३१) जुन मानिसहरूले इन्कार गरे उनीहरूले भन्दछन् : ''हामीले यस कुरआनलाई कदापि मान्ने छैनौं र ती (किताबहरू) जुन यस भन्दा अगाडिका छन् । हे आँखावालाहरू क्या राम्रो हुने थियो तिमी त्यसबेला देख्ने भए जब अत्याचारीहरू आफ्नो पालनकर्ताको अगाडि उभ्याइनेछन् र आपसमा एक अर्कामाथि दोषारोपण गरिराख्नेछन् । कमजोर मानिसहरूले ठूला मानिसहरूसँग भन्नेछन्: ''यदि तिमीहरू नभएको भए हामी अवश्य नै ईमानवाला हुने थियौं ।''

وَقَالَ ٱلَّذِينَ كَفَرُوا۟ لَن نُّؤْمِنَ بِهَٰذَا ٱلْقُرْءَانِ وَلَا بِٱلَّذِى بَيْنَ يَدَيْهِ ۗ وَلَوْ تَرَىٰٓ إِذِ ٱلظَّٰلِمُونَ مَوْقُوفُونَ عِندَ رَبِّهِمْ يَرْجِعُ بَعْضُهُمْ إِلَىٰ بَعْضٍ ٱلْقَوْلَ يَقُولُ ٱلَّذِينَ ٱسْتُضْعِفُوا۟ لِلَّذِينَ ٱسْتَكْبَرُوا۟ لَوْلَآ أَنتُمْ لَكُنَّا مُؤْمِنِينَ ٣١

३२) ती ठूला मानिसहरूले कमजोर मानिसहरूलाई जवाफ दिने छन् कि "के हामीले तिमीहरूलाई नसीहत आइसकेपछि पनि त्यस मार्गबाट रोकेका थियौं, (होइन) बरु तिमी आफै नै अपराधी थियौ ।"

قَالَ الَّذِينَ اسْتَكْبَرُوا لِلَّذِينَ اسْتُضْعِفُوا أَنَحْنُ صَدَدْنَاكُمْ عَنِ الْهُدَىٰ بَعْدَ إِذْ جَاءَكُم ۖ بَلْ كُنتُم مُّجْرِمِينَ ﴿٣٢﴾

३३) कमजोरहरूले यसको प्रतिउत्तरमा ठूलासित भन्नेछन्: "(होइन) बरु (तिम्रा)" रातदिनका षडयन्त्रहरूले अल्लाहसित हामीले कुफ्र गर्नु र तिम्रो आदेशले उसका साझेदार बनाउनु नै हाम्रो अनास्थाको कारण बन्यो । र जब तिनीहरूले सजाय देख्नेछन् त आफ्ना मनमा लज्जित हुनेछन् । र हामीले काफिरहरूको घाँटीमा (तौक़) पट्टा हालिदिनेछौं । जुन कर्म तिनीहरूले गर्दथे, मात्र त्यसैको प्रतिफल पाउनेछन् ।

وَقَالَ الَّذِينَ اسْتُضْعِفُوا لِلَّذِينَ اسْتَكْبَرُوا بَلْ مَكْرُ اللَّيْلِ وَالنَّهَارِ إِذْ تَأْمُرُونَنَا أَن نَّكْفُرَ بِاللَّهِ وَنَجْعَلَ لَهُ أَندَادًا ۚ وَأَسَرُّوا النَّدَامَةَ لَمَّا رَأَوُا الْعَذَابَ ۚ وَجَعَلْنَا الْأَغْلَالَ فِي أَعْنَاقِ الَّذِينَ كَفَرُوا ۚ هَلْ يُجْزَوْنَ إِلَّا مَا كَانُوا يَعْمَلُونَ ﴿٣٣﴾

३४) र हामीले जुन बस्तीमा पनि कुनै सचेतकर्ता पठायौं त त्यहाँका सम्पन्न मानिसहरूले यही नै भने कि, जे जति तिमीलाई दिएर पठाइयो, हामीले त्यसलाई मान्नेवाला छैनौं ।

وَمَا أَرْسَلْنَا فِي قَرْيَةٍ مِّن نَّذِيرٍ إِلَّا قَالَ مُتْرَفُوهَا إِنَّا بِمَا أُرْسِلْتُم بِهِ كَافِرُونَ ﴿٣٤﴾

३५) र (यो पनि) भने कि "हामीसित धेरै मालसम्पत्ति र सन्तानहरू छन् र हामीलाई सजाय हुनेछैन" ।

وَقَالُوا نَحْنُ أَكْثَرُ أَمْوَالًا وَأَوْلَادًا وَمَا نَحْنُ بِمُعَذَّبِينَ ﴿٣٥﴾

३६) भनिदिनुस् कि "निःसन्देह मेरो पालनकर्ताले जसको निम्ति चाहन्छ, जीविकालाई प्रचूर गरिदिन्छ र

قُلْ إِنَّ رَبِّي يَبْسُطُ الرِّزْقَ لِمَن يَشَاءُ وَيَقْدِرُ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٣٦﴾

(जसको निम्ति चाहन्छ) संकुचित गरिदिन्छ। तर धेरै मानिसहरूले बुझ्दैनन्'' ।

३७) र न तिम्रा धनसम्पत्ति र न त तिम्रा सन्तानहरू यस्ता छन् जसले तिमीलाई हामीसित दर्जामा निकट गरिदेओस् । हो, जोसुकैले ईमान ल्याए र राम्रो कर्म गरे त यस्ता मानिसहरूको निम्ति त्यसले गरेको कर्मको दुईगुणा बदला छ, र उनीहरू माथिल्लो तहका कक्षहरूमा निश्चिन्तता पूर्वक रहनेछन् ।

وَمَآ أَمْوَٰلُكُمْ وَلَآ أَوْلَٰدُكُم بِٱلَّتِى تُقَرِّبُكُمْ عِندَنَا زُلْفَىٰٓ إِلَّا مَنْ ءَامَنَ وَعَمِلَ صَٰلِحًا فَأُو۟لَٰٓئِكَ لَهُمْ جَزَآءُ ٱلضِّعْفِ بِمَا عَمِلُوا۟ وَهُمْ فِى ٱلْغُرُفَٰتِ ءَامِنُونَ ﴿٣٧﴾

३८) र जुन मानिसहरू हाम्रा आयतहरूको समकक्षता निम्ति प्रयासरत रहन्छन्, उनीहरू ल्याइएर यातनाग्रस्त गरिनेछन् ।

وَٱلَّذِينَ يَسْعَوْنَ فِىٓ ءَايَٰتِنَا مُعَٰجِزِينَ أُو۟لَٰٓئِكَ فِى ٱلْعَذَابِ مُحْضَرُونَ ﴿٣٨﴾

३९) भनिदिनुस् कि ''मेरो पालनकर्ता आफ्ना सेवकहरूमध्ये जसको निम्ति चाहन्छ, जीविका फराकिलो गर्दछ र जसको लागि चाहन्छ संकुचित गरिदिन्छ। र जेजति तिमीले अल्लाहको बाटोमा खर्च गर्‍यौ, त्यसको सट्टा तिमीलाई पूरा पूरा प्रतिफल दिनेछ। र ऊ सबैभन्दा राम्रो जीविका दिनेवाला हो'' ।

قُلْ إِنَّ رَبِّى يَبْسُطُ ٱلرِّزْقَ لِمَن يَشَآءُ مِنْ عِبَادِهِۦ وَيَقْدِرُ لَهُۥ ۚ وَمَآ أَنفَقْتُم مِّن شَىْءٍ فَهُوَ يُخْلِفُهُۥ ۖ وَهُوَ خَيْرُ ٱلرَّٰزِقِينَ ﴿٣٩﴾

४०) र जुन दिन उसले यी सबैलाई एकत्रित गर्नेछ, अनि फरिश्ताहरूसित भन्ने छः कि ''के यी मानिसहरूले तिमीलाई पूजा गर्दथे'' ?

وَيَوْمَ يَحْشُرُهُمْ جَمِيعًا ثُمَّ يَقُولُ لِلْمَلَٰٓئِكَةِ أَهَٰٓؤُلَآءِ إِيَّاكُمْ كَانُوا۟ يَعْبُدُونَ ﴿٤٠﴾

قَالُوا سُبْحَانَكَ أَنتَ وَلِيُّنَا مِن دُونِهِم ۖ بَلْ كَانُوا يَعْبُدُونَ الْجِنَّ ۖ أَكْثَرُهُم بِهِم مُّؤْمِنُونَ ﴿٤١﴾

४१) उनीहरूले भन्नेछन्: "पवित्र छौ तिमी, हाम्रो निकटताको मधुर सम्बन्ध त तिमीसितै छ, उनीहरूसित होइन, बरु कुरा यो छ कि उनीहरूले जिन्नहरूको पूजा गर्ने गर्दथे, उनीहरूमध्ये धेरैले तिनीहरूमाथि नै विश्वास गर्दथे" ।

فَالْيَوْمَ لَا يَمْلِكُ بَعْضُكُمْ لِبَعْضٍ نَّفْعًا وَلَا ضَرًّا وَنَقُولُ لِلَّذِينَ ظَلَمُوا ذُوقُوا عَذَابَ النَّارِ الَّتِي كُنتُم بِهَا تُكَذِّبُونَ ﴿٤٢﴾

४२) "अत: आज न त तिमी परस्पर एक अर्कालाई लाभ पुऱ्याउने अधिकार राख्दछौ र नत हानिको" । र हामीले ती अत्याचारीहरूसित भन्ने छौं: कि "अब त्यस आगोको यातनाको स्वाद चाख, जसलाई तिमीले असत्य भन्दै आएका छौ ।"

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ قَالُوا مَا هَٰذَا إِلَّا رَجُلٌ يُرِيدُ أَن يَصُدَّكُمْ عَمَّا كَانَ يَعْبُدُ آبَاؤُكُمْ وَقَالُوا مَا هَٰذَا إِلَّا إِفْكٌ مُّفْتَرًى ۚ وَقَالَ الَّذِينَ كَفَرُوا لِلْحَقِّ لَمَّا جَاءَهُمْ إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ﴿٤٣﴾

४३) उनीहरूलाई जब हाम्रा स्पष्ट आयतहरू पढेर सुनाइन्छ । त उनीहरू भन्दछन्: कि यो त मात्र यस्तो व्यक्ति हो जसले तिमीलाई तिम्रा पुर्खाका पूज्यहरूबाट रोक्न चाहन्छ । भन्दछन्: "यो त एउटा मनगढन्त असत्य हो ।" र उनको पासमा सत्य आइसकेपछि पनि उनीहरू, भनिहाले: "यो त एउटा प्रत्यक्ष जादू हो ।"

وَمَا آتَيْنَاهُم مِّن كُتُبٍ يَدْرُسُونَهَا ۖ وَمَا أَرْسَلْنَا إِلَيْهِمْ قَبْلَكَ مِن نَّذِيرٍ ﴿٤٤﴾

४४) र यी मक्का बासीहरूलाई हामीले नत किताबहरू दियौं, जसलाई यिनीहरूले पढुन् र न तपाईंभन्दा पहिला उनीहरूतिर कुनै सचेतक पठाएका थियौं ।

४५) र उनीहरूभन्दा पहिलाका मानिसहरूले पनि हाम्रो कुरालाई झूठा ठहराएका थिए र जेजति हामीले उनीहरूलाई दिएका थियौं यिनीहरू त्यसको दसौं भागसम्म पनि पुगेनन् । अनि उनीहरूले मेरा रसूलहरूलाई झूठा भने, त (हेर) मेरो सजाय कति कडा रह्यो ?

وَكَذَّبَ الَّذِينَ مِن قَبْلِهِمْ وَمَا بَلَغُوا مِعْشَارَ
مَا آتَيْنَاهُمْ فَكَذَّبُوا رُسُلِي ۖ فَكَيْفَ كَانَ نَكِيرِ ﴿٤٥﴾

४६) भनिदिनुस्: "म तिमीलाई एउटै कुराको उपदेश गर्दछु कि अल्लाहको निम्ति दुई-दुई र एक-एक गरी उभिहाल, अनि विचार गर । तिम्रो यस साथीलाई कुनै उन्माद छैन । ऊ त एउटा कठोर यातना हुनु भन्दा अगाडि तिमीलाई सचेत गर्नेवाला नै हो" ।

قُلْ إِنَّمَا أَعِظُكُم بِوَاحِدَةٍ ۖ أَن تَقُومُوا لِلَّهِ
مَثْنَىٰ وَفُرَادَىٰ ثُمَّ تَتَفَكَّرُوا ۚ مَا بِصَاحِبِكُم
مِّن جِنَّةٍ ۚ إِنْ هُوَ إِلَّا نَذِيرٌ لَّكُم بَيْنَ يَدَيْ
عَذَابٍ شَدِيدٍ ﴿٤٦﴾

४७) भन्नुस्: मैले तिमीसँग कुनै बद्ला मागेको छु भने त्यो तिम्रै लागि नै हो । मेरो पुरस्कार त मात्र अल्लाहको जिम्मामा छ र ऊ प्रत्येक कुराको साक्षी र जानकार छ" ।

قُلْ مَا سَأَلْتُكُم مِّنْ أَجْرٍ فَهُوَ لَكُمْ ۖ إِنْ أَجْرِيَ
إِلَّا عَلَى اللَّهِ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٤٧﴾

४८) भनिदिनुस् कि "मेरो पालनकर्ताले माथिबाट सत्य वह्य पठाउँछ उसले परोक्ष कुरा जान्दछ" ।

قُلْ إِنَّ رَبِّي يَقْذِفُ بِالْحَقِّ عَلَّامُ الْغُيُوبِ ﴿٤٨﴾

४९) भनिदिनुस् "सत्य आइसकेको छ असत्यले नत अगाडि केही गर्न सक्यो र नगर्न सक्नेछ" ।

قُلْ جَاءَ الْحَقُّ وَمَا يُبْدِئُ الْبَاطِلُ وَمَا يُعِيدُ ﴿٤٩﴾

५०) भनिदिनुस्: "यदि म विचलित हुन्छु भने मेरो विचलनको दोष ममाथि

قُلْ إِن ضَلَلْتُ فَإِنَّمَا أَضِلُّ عَلَىٰ نَفْسِي ۖ وَإِنِ
اهْتَدَيْتُ فَبِمَا يُوحِي إِلَيَّ رَبِّي ۚ إِنَّهُ سَمِيعٌ قَرِيبٌ ﴿٥٠﴾

नै हुनेछ । र यदि म सोझो मार्गमा छु, भने यसको कारण त्यो वह्य हो जुन कि मेरो पालनहारले मतिर पठाउँछ। ऊ सबै कुरा सुन्दछ र धेरै नजीक छ ।

وَلَوْ تَرَىٰٓ إِذْ فَزِعُوا۟ فَلَا فَوْتَ وَأُخِذُوا۟ مِن مَّكَانٍ قَرِيبٍ ﴿٥١﴾

५१) र यदि तपाईंले त्यो समय देख्नु हुन्छ जब काफिरहरू आत्तिएका हुनेछन्, अनि बाँचेर भाग्न सक्ने कुनै तरीका हुनेछैन र नजिकबाट समातिनेछन् ।

وَقَالُوٓا۟ ءَامَنَّا بِهِۦ وَأَنَّىٰ لَهُمُ ٱلتَّنَاوُشُ مِن مَّكَانٍۭ بَعِيدٍ ﴿٥٢﴾

५२) यसबेला भन्नेछन्: कि "हामीले यस कुरआनमाथि ईमान ल्यायौं ।" तर उनीहरूको निम्ति कहाँ सम्भव छ कि यति टाढा उसलाई पाउनसकुन् ।

وَقَدْ كَفَرُوا۟ بِهِۦ مِن قَبْلُ ۖ وَيَقْذِفُونَ بِٱلْغَيْبِ مِن مَّكَانٍۭ بَعِيدٍ ﴿٥٣﴾

५३) यस भन्दा पहिला त उनीहरूले यसको इन्कार गरे र टाढाबाट नदेखिकन, अड्कलबाजी गरिरहे ।

وَحِيلَ بَيْنَهُمْ وَبَيْنَ مَا يَشْتَهُونَ كَمَا فُعِلَ بِأَشْيَاعِهِم مِّن قَبْلُ ۚ إِنَّهُمْ كَانُوا۟ فِى شَكٍّ مُّرِيبٍۭ ﴿٥٤﴾

५४) उनीहरू र उनीहरूका इच्छाहरूको बीचमा रोक लगाइनेछ, जुन प्रकारले यसभन्दा अगाडि पनि उनका सहमार्गीहरूसँग गरियो । उनी पनि निश्चय नै (उनीहरू जस्तै) सन्देह र असमंजसमा थिए ।



# सूरतु फ़ातिर-३५




सूरतु फ़ातिर मक्की हो, र यसमा ४५ आयतहरू र ५ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

१) सम्पूर्ण प्रशंसाहरू अल्लाहकै लागि छन्, जो आकाशहरू र धरतीको स्रष्टा हो । (र) दुई-दुई, तीन-तीन, चार-चार पखेटा भएको फरिश्ताहरूलाई सन्देशवाहक बनाउनेवाला हो । उसले (आफ्नो) सृष्टिमा जस्तो चाहन्छ, अभिवृद्धि गर्दछ । निश्चय नै अल्लाहलाई हरेक कुराको सामर्थ्य छ ।

ٱلْحَمْدُ لِلَّهِ فَاطِرِ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ جَاعِلِ ٱلْمَلَٰٓئِكَةِ رُسُلًا أُو۟لِىٓ أَجْنِحَةٍ مَّثْنَىٰ وَثُلَٰثَ وَرُبَٰعَ ۚ يَزِيدُ فِى ٱلْخَلْقِ مَا يَشَآءُ ۚ إِنَّ ٱللَّهَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ①

२) अल्लाहले आफ्नो दया मानिसहरूका लागि खोलिदिन्छ भने त्यसलाई बन्द गर्नेवाला कोही छैन् र यदि बन्द गरिदिन्छ भने ऊ पश्चात त्यसलाई कोही खोल्नेवाला छैन । ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।

مَّا يَفْتَحِ ٱللَّهُ لِلنَّاسِ مِن رَّحْمَةٍ فَلَا مُمْسِكَ لَهَا ۖ وَمَا يُمْسِكْ فَلَا مُرْسِلَ لَهُۥ مِنۢ بَعْدِهِۦ ۚ وَهُوَ ٱلْعَزِيزُ ٱلْحَكِيمُ ②

३) हे मानिसहरू ! तिमीमाथि जुन अनुकम्पा अल्लाहले गरेको छ, त्यसलाई स्मरण गर । के अल्लाह बाहेक कोही अरु स्रष्टा छ, जसले तिमीलाई आकाश र धरतीबाट जीविका प्रदान गर्दछ ? उस बाहेक कोही पूज्य छैन । त्यसो भए तिमी कता मार्ग विचलित भइराखेका छौ ?

يَٰٓأَيُّهَا ٱلنَّاسُ ٱذْكُرُوا۟ نِعْمَتَ ٱللَّهِ عَلَيْكُمْ ۚ هَلْ مِنْ خَٰلِقٍ غَيْرُ ٱللَّهِ يَرْزُقُكُم مِّنَ ٱلسَّمَآءِ وَٱلْأَرْضِ ۚ لَآ إِلَٰهَ إِلَّا هُوَ ۖ فَأَنَّىٰ تُؤْفَكُونَ ③

وَاِنْ يُّكَذِّبُوْكَ فَقَدْ كُذِّبَتْ رُسُلٌ مِّنْ قَبْلِكَ ۗ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ④

४) र यदि उनीहरूले तपाईंलाई झूठो भन्छन् भने तपाईंभन्दा अगाडि पनि कैयन् रसूलहरूलाई झूठा भनिएको थियो । र (सबै) काम अल्लाहतिर नै फर्काइनेछ ।

يٰۤاَيُّهَا النَّاسُ اِنَّ وَعْدَ اللّٰهِ حَقٌّ فَلَا تَغُرَّنَّكُمُ الْحَيٰوةُ الدُّنْيَا ۥ وَلَا يَغُرَّنَّكُمْ بِاللّٰهِ الْغَرُوْرُ ⑤

५) हे मानिसहरू ! अल्लाहको वचन सत्य छ । अतः सांसारिक जीवनले तिमीलाई धोखामा नपारोस् र न त्यस धोकेबाज शैतानले अल्लाहको विषयमा तिमीलाई धोकामा पारोस् ।

اِنَّ الشَّيْطٰنَ لَكُمْ عَدُوٌّ فَاتَّخِذُوْهُ عَدُوًّا ۗ اِنَّمَا يَدْعُوْا حِزْبَهٗ لِيَكُوْنُوْا مِنْ اَصْحٰبِ السَّعِيْرِ ⑥

६) यादराख शैतान तिम्रो शत्रु हो । तिमीले उसलाई शत्रु नै ठान । त्यसले त आफ्नो गिरोहलाई केवल यसकारणले बोलाइराखेको छ कि उनीहरू नर्कको आगोमा शम्मिलित हुने छन् ।

اَلَّذِيْنَ كَفَرُوْا لَهُمْ عَذَابٌ شَدِيْدٌ ۗ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ كَبِيْرٌ ⑦

७) ती मानिसहरू जसले कि इन्कार गरे उनीहरूको निम्ति कठोर सजाय छ । किन्तु जसले ईमान ल्याए र असल कर्म गरे उनीहरूको निम्ति क्षमा र ठूलो प्रतिफल छ ।

اَفَمَنْ زُيِّنَ لَهٗ سُوْٓءُ عَمَلِهٖ فَرَاٰهُ حَسَنًا ۗ فَاِنَّ اللّٰهَ يُضِلُّ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ۖ فَلَا تَذْهَبْ نَفْسُكَ عَلَيْهِمْ حَسَرٰتٍ ۗ اِنَّ اللّٰهَ عَلِيْمٌ بِمَا يَصْنَعُوْنَ ⑧

८) अनि के त्यो व्यक्ति जसको लागि उसको नराम्रो कर्म आकर्षक बनाइएको छ र जसलाई उसले राम्रो देखदैछ ? निश्चय नै अल्लाह जसलाई चाहन्छ, मार्गबाट वञ्चित राख्दछ र जसलाई चाहन्छ सोझो बाटो देखाउँछ ! तसर्थ उनीहरूको निम्ति अफसोच गर्दा-गर्दै तपाईं प्राण

जोखिममा नपार्नुस् । अल्लाहले राम्रोसँग जान्दछ, जे उनीहरूले गरिराखेका छन् ।

९) र अल्लाहले नै हावाहरू चलाउँछ र तिनले बादलहरूलाई उचाल्छन्, अनि हामीले त्यसलाई कुनै शुष्क भू-भागतिर लग्छौं, र त्यसबाट हामीले मृत धरतीलाई जीवित गरिदिन्छौं । यसै प्रकार मानिसहरूलाई पनि दोहऱ्याएर जीवित भई उठ्नु पर्ने छ ।

وَاللّٰهُ الَّذِیْٓ اَرْسَلَ الرِّیٰحَ فَتُثِیْرُ سَحَابًا فَسُقْنٰهُ اِلٰی بَلَدٍ مَّیِّتٍ فَاَحْیَیْنَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ؕ كَذٰلِكَ النُّشُوْرُ ﴿٩﴾

१०) यदि कसैले सम्मान चाहन्छ भने सम्पूर्ण सम्मान अल्लाहकै लागि हो । उसैतिर सबै राम्रा पवित्र वचनहरू पुग्दछन् र असल कर्मले उनलाई माथि उठाउँछ । र जुन मानिसहरूले नराम्रा षडयन्त्र रच्दछन्, उनीहरूको निम्ति कठोर यातना छ र उनीहरूको यो षडयन्त्र मेटिएर जाने छ ।

مَنْ كَانَ یُرِیْدُ الْعِزَّةَ فَلِلّٰهِ الْعِزَّةُ جَمِیْعًا ؕ اِلَیْهِ یَصْعَدُ الْكَلِمُ الطَّیِّبُ وَالْعَمَلُ الصَّالِحُ یَرْفَعُهٗ ؕ وَالَّذِیْنَ یَمْكُرُوْنَ السَّیِّاٰتِ لَهُمْ عَذَابٌ شَدِیْدٌ ؕ وَمَكْرُ اُولٰٓىِٕكَ هُوَ یَبُوْرُ ﴿١٠﴾

११) मानिसहरू हो ! अल्लाहले तिमीलाई माटोबाट अनि वीर्यबाट सृष्टि गऱ्यो, अनि तिमीलाई जोडा-जोडा (लोग्ने-स्वास्नी) बनायो । स्त्री गर्भवती हुनु र बच्चा जन्मनु सबै उसको जानकारीमा हुन्छ । र जुन बढी आयु कसैले प्राप्त गर्दछ र जे-जति कसैको आयुमा कमी हुन्छ, यो सबै किताबमा लेखिएको हुन्छ । यो सबै अल्लाहको निम्ति सरल छ ।

وَاللّٰهُ خَلَقَكُمْ مِّنْ تُرَابٍ ثُمَّ مِنْ نُّطْفَةٍ ثُمَّ جَعَلَكُمْ اَزْوَاجًا ؕ وَمَا تَحْمِلُ مِنْ اُنْثٰی وَلَا تَضَعُ اِلَّا بِعِلْمِهٖ ؕ وَمَا یُعَمَّرُ مِنْ مُّعَمَّرٍ وَّلَا یُنْقَصُ مِنْ عُمُرِهٖٓ اِلَّا فِیْ كِتٰبٍ ؕ اِنَّ ذٰلِكَ عَلَی اللّٰهِ یَسِیْرٌ ﴿١١﴾

१२) र दुई सागर एकै जस्तो हुँदैनन्, एउटा (को पानी) मिठो स्वादिलो छ, तिर्खा मिटाउँछ पिउनमा रुचिकर छ र अर्का (को पानी) नुनिलो छ, बेस्वाद र तिमीले प्रत्येकबाट ताजा मासु खान्छौ र आभूषण निकाल्दछौ, जुन तिमीले पहिरन्छौ । र तिमीले हेर्दछौ कि ठूल-ठूला डुङ्गाहरूले पानीलाई चिर्दै गइराखेका छन्, ताकि (यसबाट) तिमीले उसको उदार अनुग्रह खोज, र तिमी उसप्रति आभरी बन ।

وَمَا يَسْتَوِي الْبَحْرٰنِ ۖ هٰذَا عَذْبٌ فُرَاتٌ سَآئِغٌ شَرَابُهٗ وَهٰذَا مِلْحٌ اُجَاجٌ ؕ وَمِنْ كُلٍّ تَاْكُلُوْنَ لَحْمًا طَرِيًّا وَّتَسْتَخْرِجُوْنَ حِلْيَةً تَلْبَسُوْنَهَا ۚ وَتَرَى الْفُلْكَ فِيْهِ مَوَاخِرَ لِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٢﴾

१३) उसले रातलाई दिनमा प्रविष्ट गराउँदछ र दिनलाई रातमा प्रविष्ट गराउँदछ । र उसले सूर्य र चन्द्रलाई काममा लगाइराखेको छ । प्रत्येक कुरो एक निर्धारित समयमा चलिराखेको छ । यही अल्लाह तिम्रो सबैको पालनकर्ता हो । उसैको सत्ता छ । उसबाहेक तिमीले जसलाई पुकार्दछौ, उनीहरू त खजूरको गेडोको बोक्रा बराबर पनि (कुनै कुराको) मालिक छैनन् ।

يُوْلِجُ الَّيْلَ فِي النَّهَارِ وَيُوْلِجُ النَّهَارَ فِي الَّيْلِ ۙ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ۖ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ؕ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ لَهُ الْمُلْكُ ؕ وَالَّذِيْنَ تَدْعُوْنَ مِنْ دُوْنِهٖ مَا يَمْلِكُوْنَ مِنْ قِطْمِيْرٍ ؕ﴿١٣﴾

१४) यदि तिमी उनीहरूलाई पुकार्दछौ भने उनीहरू तिम्रो पुकार सुन्ने छैनन् । र यदि (मानिलिउँ) सुनि पनि हालेछन् भने तिम्रो कुरालाई स्वीकार गर्न सक्ने छैनन् र कियामतका दिन उनीहरूले तिम्रो यस शिर्क ठहराउने कुरोबाट इन्कार

اِنْ تَدْعُوْهُمْ لَا يَسْمَعُوْا دُعَآءَكُمْ ۚ وَلَوْ سَمِعُوْا مَا اسْتَجَابُوْا لَكُمْ ؕ وَيَوْمَ الْقِيٰمَةِ يَكْفُرُوْنَ بِشِرْكِكُمْ ؕ وَلَا يُنَبِّئُكَ مِثْلُ خَبِيْرٍ ۧ﴿١٤﴾

गर्नेछन् र तपाईंलाई कसैले अल्लाह झैं खबरहरू दिने छैन ।

१५) हे मानिसहरू! तिमी अल्लाहको मुखापेक्षी (भिखारी) हौ र अल्लाह त निष्पृह, र सर्वगुणवान छ ।

يَٰٓأَيُّهَا ٱلنَّاسُ أَنتُمُ ٱلْفُقَرَآءُ إِلَى ٱللَّهِ ۖ وَٱللَّهُ هُوَ ٱلْغَنِىُّ ٱلْحَمِيدُ ﴿١٥﴾

१६) यदि उसले चाहने हो भने तिमीलाई मेटाउन सक्छ र एउटा नयाँ सृष्टि बनाउन सक्छ ।

إِن يَشَأْ يُذْهِبْكُمْ وَيَأْتِ بِخَلْقٍ جَدِيدٍ ﴿١٦﴾

१७) र यो कुरा अल्लाहको निम्ति केही कठिन छैन ।

وَمَا ذَٰلِكَ عَلَى ٱللَّهِ بِعَزِيزٍ ﴿١٧﴾

१८) कुनै भारी बोक्नेले अर्काको भारी बोक्ने छैन । र यदि कोही भारीले थिचिएको व्यक्तिले आफ्नो भारी बोक्न अरूलाई बोलाउने छ भने त्यसबाट उसले केही पनि उठाउने छैन, यद्यपि त्यो निकट कै सम्बन्धि नै किन नहोस् । तपाईंले त ती मानिसहरूलाई मात्र सावधान गर्न सक्नु हुन्छ, जो नदेखिकन् पनि आफ्ना पालनकर्तासित डराउँछन् र नियमित नमाज पढ्दै गर्छन् र जो व्यक्ति पवित्र बन्दछ त्यो आफ्नो निम्ति नै पवित्र हुनेछ । र अल्लाहतिर नै फर्केर जानुपर्ने छ ।

وَلَا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ۚ وَإِن تَدْعُ مُثْقَلَةٌ إِلَىٰ حِمْلِهَا لَا يُحْمَلْ مِنْهُ شَىْءٌ وَلَوْ كَانَ ذَا قُرْبَىٰٓ ۗ إِنَّمَا تُنذِرُ ٱلَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِٱلْغَيْبِ وَأَقَامُوا۟ ٱلصَّلَوٰةَ ۚ وَمَن تَزَكَّىٰ فَإِنَّمَا يَتَزَكَّىٰ لِنَفْسِهِۦ ۚ وَإِلَى ٱللَّهِ ٱلْمَصِيرُ ﴿١٨﴾

१९) र अन्धो र आँखा देखने (मानिस) समान छैनन् ।

وَمَا يَسْتَوِى ٱلْأَعْمَىٰ وَٱلْبَصِيرُ ﴿١٩﴾

२०) र नत अँध्यारो र उज्यालो,

وَلَا ٱلظُّلُمَٰتُ وَلَا ٱلنُّورُ ﴿٢٠﴾

२१) र न छायाँ र घाम,

وَلَا ٱلظِّلُّ وَلَا ٱلْحَرُورُ ﴿٢١﴾

२२) र जीवित र मृत बराबर हुनसक्दैनन् । अल्लाहले जसलाई चाहन्छ, सुनाइदिन्छ र तपाईंले उनीहरूलाई जो चिहानहरूमा छन्, सुनाउन सक्नु हुन्न ।

وَمَا يَسْتَوِي الْأَحْيَاءُ وَلَا الْأَمْوَاتُ ۚ إِنَّ اللَّهَ يُسْمِعُ مَنْ يَشَاءُ ۖ وَمَا أَنْتَ بِمُسْمِعٍ مَنْ فِي الْقُبُورِ ﴿٢٢﴾

२३) तपाईं त मात्र सचेतकर्ता हौ ।

إِنْ أَنْتَ إِلَّا نَذِيرٌ ﴿٢٣﴾

२४) हामीले नै तपाईंलाई सत्यका साथ शुभ सूचना सुनाउन र डर देखाउन पठाएका छौं, र कुनै समुदाय यस्तो भएन जसमा कुनै डराउनेवाला भएको नहोस् ।

إِنَّا أَرْسَلْنَاكَ بِالْحَقِّ بَشِيرًا وَنَذِيرًا ۚ وَإِنْ مِنْ أُمَّةٍ إِلَّا خَلَا فِيهَا نَذِيرٌ ﴿٢٤﴾

२५) र यदि उनीहरूले तपाईंलाई झूठा भन्छन् भने जो उनीभन्दा पहिला थिए उनीहरूले पनि झूठा भनिसकेकाछन् । उनीहरूका रसूलले पनि उनका पासमा स्पष्ट प्रमाण, चमत्कार र अल्लाहका किताब लिएर आएका थिए ।

وَإِنْ يُكَذِّبُوكَ فَقَدْ كَذَّبَ الَّذِينَ مِنْ قَبْلِهِمْ جَاءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنَاتِ وَبِالزُّبُرِ وَبِالْكِتَابِ الْمُنِيرِ ﴿٢٥﴾

२६) अनि मैले इन्कारीहरूलाई समातिहालें, तसर्थ मेरो सजाय कस्तो रह्यो ।

ثُمَّ أَخَذْتُ الَّذِينَ كَفَرُوا ۖ فَكَيْفَ كَانَ نَكِيرِ ﴿٢٦﴾

२७) के तपाईंले यसलाई देख्नु भएन कि अल्लाहले आकाशबाट पानी बर्सायो अनि त्यसबाट हामीले अनेक रङ्गका फलहरू उत्पन्न गर्‍यौं र पहाडहरूको पनि अनेक भाग छन् सेता र राता विभिन्न रङ्गका धर्काहरू पाइन्छन् र (कोही) धेरै कालो पनि ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ أَنْزَلَ مِنَ السَّمَاءِ مَاءً فَأَخْرَجْنَا بِهِ ثَمَرَاتٍ مُخْتَلِفًا أَلْوَانُهَا ۚ وَمِنَ الْجِبَالِ جُدَدٌ بِيضٌ وَحُمْرٌ مُخْتَلِفٌ أَلْوَانُهَا وَغَرَابِيبُ سُودٌ ﴿٢٧﴾

२८) र यस्तै मानिसहरू, जनावरहरू र

وَمِنَ النَّاسِ وَالدَّوَابِّ وَالْأَنْعَامِ مُخْتَلِفٌ

चौपायाहरूमा पनि कैयन् प्रकारका रङ्गहरू छन् । र अल्लाहसित उसका तिनै सेवकहरू डर मान्छन् जो ज्ञानी छन् । निश्चय नै अल्लाह अधिपत्यशाली, क्षमाशील छ ।

اَلْوَانُهٗ كَذٰلِكَ ؕ اِنَّمَا يَخْشَى اللّٰهَ مِنْ عِبَادِهِ الْعُلَمٰٓؤُا ؕ اِنَّ اللّٰهَ عَزِيْزٌ غَفُوْرٌ ﴿٢٨﴾

२९) जुन मानिसहरूले अल्लाहको किताब पढ्दछन् र नमाज नटुटाइकन पढ्छन् र जेजति हामीले उनीहरूलाई प्रदान गरेका छौं, त्यसबाट प्रत्यक्ष र परोक्ष रूपले खर्च गर्दछन्, तिनीहरू त्यस्तो व्यापारका उम्मेदवार छन् जुन कि कहिल्यै घाटामा हुनेछैन ।

اِنَّ الَّذِيْنَ يَتْلُوْنَ كِتٰبَ اللّٰهِ وَاَقَامُوا الصَّلٰوةَ وَاَنْفَقُوْا مِمَّا رَزَقْنٰهُمْ سِرًّا وَّعَلَانِيَةً يَّرْجُوْنَ تِجَارَةً لَّنْ تَبُوْرَ ﴿٢٩﴾

३०) किनभने (अल्लाह) उनीहरूलाई पूरा-पूरा प्रतिफल दिनेछ र आफ्नो उदार अनुग्रहले केही बढी पनि दिनेछ । निःसन्देह ऊ धेरै क्षमाशील र गुणग्राही छ ।

لِيُوَفِّيَهُمْ اُجُوْرَهُمْ وَيَزِيْدَهُمْ مِّنْ فَضْلِهٖ ؕ اِنَّهٗ غَفُوْرٌ شَكُوْرٌ ﴿٣٠﴾

३१) र यो किताब जुन हामीले तपाईंतिर वह्यको रूपमा पठाएका छौं, यो बिल्कुल सत्य छ जसले यस भन्दा पहिलाका किताबहरूको पनि पुष्टि गर्दछ, अल्लाह आफ्ना सेवकहरूका सबै कुरासित अवगत र सबै देख्नेवाला छ ।

وَالَّذِيْٓ اَوْحَيْنَآ اِلَيْكَ مِنَ الْكِتٰبِ هُوَ الْحَقُّ مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ ؕ اِنَّ اللّٰهَ بِعِبَادِهٖ لَخَبِيْرٌۢ بَصِيْرٌ ﴿٣١﴾

३२) अनि हामीले ती मानिसहरूलाई यस किताबका उत्तराधिकारी बनायौं, जसलाई आफ्ना सेवकहरू मध्ये रोज्यौं । उनीहरूमध्ये केही त आफैंले आफूमाथि अत्याचार गर्दछन्

ثُمَّ اَوْرَثْنَا الْكِتٰبَ الَّذِيْنَ اصْطَفَيْنَا مِنْ عِبَادِنَا ۚ فَمِنْهُمْ ظَالِمٌ لِّنَفْسِهٖ ۚ وَمِنْهُمْ مُّقْتَصِدٌ ۚ وَمِنْهُمْ سَابِقٌۢ بِالْخَيْرٰتِ بِاِذْنِ اللّٰهِ ؕ ذٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيْرُ ﴿٣٢﴾

र उनीहरूमध्ये कोही मध्यम श्रेणीका छन् र अल्लाहको आदेशले तिनीहरूमध्ये केही असल कर्ममा वृद्धि गर्दै गइरहन्छन् । यही नै ठूलो उपकार हो ।

३३) (ती मानिसहरूको निम्ति)सधैं रहने बगैंचाहरू (छन्), जसमा उनीहरू प्रवेश गर्ने छन् । त्यहाँ उनीहरूलाई सुनका कङ्गनहरू र मोतीको आभूषण पहिराइनेछन् । र त्यहाँ उनीहरूको बस्त्र रेशमको हुनेछ ।

جَنّٰتُ عَدۡنٍ يَّدۡخُلُوۡنَهَا يُحَلَّوۡنَ فِيۡهَا مِنۡ اَسَاوِرَ مِنۡ ذَهَبٍ وَّلُؤۡلُؤًا ۚ وَلِبَاسُهُمۡ فِيۡهَا حَرِيۡرٌ ﴿٣٣﴾

३४) र उनीहरूले भन्नेछन्: “अल्लाहको धेरै-धेरै कृपा छ जसले हामीबाट दुःख (चिन्ता) हटाइदियो । निश्चय नै हाम्रो पालनकर्ता अत्यन्तै क्षमाशील, बडो गुणग्राही छ ।

وَقَالُوا الۡحَمۡدُ لِلّٰهِ الَّذِىۡۤ اَذۡهَبَ عَنَّا الۡحَزَنَ ؕ اِنَّ رَبَّنَا لَغَفُوۡرٌ شَكُوۡرُ ۙ﴿٣٤﴾

३५) जसले हामीलाई आफ्नो कृपाले सधैं बस्ने घरमा उतारेको छ । यहाँ नत हामीलाई कुनै कष्ट हुनेछ र न हामीलाई थकाइ नै लाग्नेछ ।”

اۨلَّذِىۡۤ اَحَلَّنَا دَارَ الۡمُقَامَةِ مِنۡ فَضۡلِهٖ ۚ لَا يَمَسُّنَا فِيۡهَا نَصَبٌ وَّلَا يَمَسُّنَا فِيۡهَا لُغُوۡبٌ ﴿٣٥﴾

३६) र जुन मानिसहरूले कुफ्र गरे, उनीहरूको लागि नर्कको आगो छ, नत उनीहरूलाई मृत्यु आउनेछ कि मरिहालुन् र न उनको सजाय नै उनीहरूबाट हल्का गरिनेछ । हामीले हरेक काफिरलाई यस्तै सजाय दिने गर्दछौं ।

وَالَّذِيۡنَ كَفَرُوۡا لَهُمۡ نَارُ جَهَنَّمَ ۚ لَا يُقۡضٰى عَلَيۡهِمۡ فَيَمُوۡتُوۡا وَلَا يُخَفَّفُ عَنۡهُمۡ مِّنۡ عَذَابِهَا ؕ كَذٰلِكَ نَجۡزِىۡ كُلَّ كَفُوۡرٍ ۚ﴿٣٦﴾

३७) र उनीहरू त्यसमा कराउनेछन् कि “हे हाम्रो पालनकर्ता ! हामीहरूलाई

وَهُمۡ يَصۡطَرِخُوۡنَ فِيۡهَا ۚ رَبَّنَاۤ اَخۡرِجۡنَا نَعۡمَلۡ صَالِحًا غَيۡرَ الَّذِىۡ كُنَّا نَعۡمَلُ ؕ اَوَلَمۡ نُعَمِّرۡكُمۡ

مَّا يَتَذَكَّرُ فِيهِ مَنْ تَذَكَّرَ وَجَآءَكُمُ النَّذِيرُ ۖ فَذُوقُوا فَمَا لِلظّٰلِمِينَ مِنْ نَّصِيرٍ ﴿٣٧﴾

(यहाँबाट) निकालिहाल ! (अब) हामीले असल कर्म गर्नेछौं, नकि त्यो जुन अघि गर्ने गर्दथ्यौं'' । (अल्लाहले भन्नेछ) के ''हामीले तिमीलाई यति उमेर दिएका थिएनौं कि त्यसमा जे सोच्न चाहन्थ्यौ सोचिहाल्थ्यौ, र तिम्रो पासमा सचेतकर्ता पनि आयो । तसर्थ अब स्वाद चाखिराख यस्ता अत्याचारीहरूको कोही मद्दतगार छैन ।''

إِنَّ اللّٰهَ عٰلِمُ غَيْبِ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ إِنَّهُ عَلِيمٌۢ بِذَاتِ الصُّدُورِ ﴿٣٨﴾

३८) निःसन्देह अल्लाह आकाशहरू र धरतीमा लुकेका अदृश्य कुरा जान्नेवाला छ। उसले त हृदयभित्रका कुरासम्म पनि जान्दछ ।

هُوَ الَّذِي جَعَلَكُمْ خَلٰٓئِفَ فِي الْأَرْضِ ۚ فَمَنْ كَفَرَ فَعَلَيْهِ كُفْرُهُ ۖ وَلَا يَزِيدُ الْكٰفِرِينَ كُفْرُهُمْ عِنْدَ رَبِّهِمْ إِلَّا مَقْتًا ۖ وَلَا يَزِيدُ الْكٰفِرِينَ كُفْرُهُمْ إِلَّا خَسَارًا ﴿٣٩﴾

३९) उही हो जसले तिमीलाई धरतीमा आबाद गऱ्यो । अब जोसुकैले इन्कार गर्नेछ, उसको इन्कारको नोक्सानी उसैलाई नै हुनेछ । इन्कार गर्नेवालाहरूको इन्कार उनीहरूको पालनकर्ताको प्रकोप नै बढाउँदछ, र इन्कार गर्नेवालाहरूको लागि इन्कार घाटामा नै अझैवृद्धिको कारण बन्दछ ।

قُلْ أَرَءَيْتُمْ شُرَكَآءَكُمُ الَّذِينَ تَدْعُونَ مِنْ دُونِ اللّٰهِ ۖ أَرُونِي مَاذَا خَلَقُوا مِنَ الْأَرْضِ أَمْ لَهُمْ شِرْكٌ فِي السَّمٰوٰتِ ۚ أَمْ اٰتَيْنٰهُمْ كِتٰبًا فَهُمْ عَلٰى بَيِّنَتٍ مِّنْهُ ۚ بَلْ إِنْ يَّعِدُ الظّٰلِمُونَ بَعْضُهُمْ بَعْضًا إِلَّا غُرُورًا ﴿٤٠﴾

४०) तपाईंले भन्नुस् कि तिमीले आफूले ठहराएका साझेदारहरूको अवस्था बताऊ, जसलाई तिमीले अल्लाहलाई छोडेर पूज्ने गर्दथ्यौ ?'' मलाई देखाऊ कि उनीहरूले धरतीको कुनचाहिँ भाग सृष्टि गरेका छन्

वा आकाशहरूमा उनीहरूको कुनै भागिदारी छ ?'' वा हामीले उनीहरूलाई कुनै किताब प्रदान गऱ्यौं कि, उसको स्पष्ट प्रमाण उनीहरूको पक्षमा होस् ? (होइन) बरु ती अत्याचारीहरू आपसमा एक अर्कासित मात्र धोखाको कुराहरूका वाचा गरिराखेका छन् ।

إِنَّ ٱللَّهَ يُمْسِكُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ أَن تَزُولَا ۚ وَلَئِن زَالَتَآ إِنْ أَمْسَكَهُمَا مِنْ أَحَدٍ مِّنۢ بَعْدِهِۦٓ ۚ إِنَّهُۥ كَانَ حَلِيمًا غَفُورًا ﴿٤١﴾

४१) यो निश्चित छ कि अल्लाहले नै आकाशहरू र धरतीलाई थामिराखेको छ कि उनीहरू नहटुन्, यदि (आफ्नो ठाउँबाट) उनीहरू हटे भने अल्लाह बाहेक कोही पनि उनीहरूलाई थाम्न सक्दैन । ऊ बडो सहनशील क्षमा गर्नेवाला हो ।

وَأَقْسَمُوا۟ بِٱللَّهِ جَهْدَ أَيْمَٰنِهِمْ لَئِن جَآءَهُمْ نَذِيرٌ لَّيَكُونُنَّ أَهْدَىٰ مِنْ إِحْدَى ٱلْأُمَمِ ۖ فَلَمَّا جَآءَهُمْ نَذِيرٌ مَّا زَادَهُمْ إِلَّا نُفُورًا ﴿٤٢﴾

४२) र यिनीहरूले (काफिरहरूले) अल्लाहसमक्ष ठूलो-ठूलो शपथ खान्छन् कि यदि उनको पासमा कोही सचेतकर्ता आउँछ भने यिनीहरू हरेक समुदायभन्दा बढी सोझो मार्गमा हुनेछन्, तर जब उनको पासमा सचेतकर्ता आयो तब उससित उनीहरूको घृणा नै बढ्यो ।

ٱسْتِكْبَارًا فِى ٱلْأَرْضِ وَمَكْرَ ٱلسَّيِّئِ ۚ وَلَا يَحِيقُ ٱلْمَكْرُ ٱلسَّيِّئُ إِلَّا بِأَهْلِهِۦ ۚ فَهَلْ يَنظُرُونَ إِلَّا سُنَّتَ ٱلْأَوَّلِينَ ۚ فَلَن تَجِدَ لِسُنَّتِ ٱللَّهِ تَبْدِيلًا ۖ وَلَن تَجِدَ لِسُنَّتِ ٱللَّهِ تَحْوِيلًا ﴿٤٣﴾

४३) संसारमा आफूलाई ठूलो ठान्नुको कारण र उनको खराब कार्यबाट ती नराम्रो कर्मको हानि ती काम गर्नेहरूमाथि नै पर्छ । त के यिनीहरू त्यसैको प्रतिक्षा गरिराखेका छन् ? जुन पहिलाका मानिसहरूसँग

हुने गरेको थियो । तसर्थ तिमीले अल्लाहको कानूनमा कदापि कुनै परिवर्तन पाउने छैनौ र न तिमी अल्लाहको कानूनलाई कहिल्यै परिवर्तित भइराखेको पाउनेछौ ।

أَوَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِن قَبْلِهِمْ وَكَانُوا أَشَدَّ مِنْهُمْ قُوَّةً ۚ وَمَا كَانَ اللَّهُ لِيُعْجِزَهُ مِن شَيْءٍ فِي السَّمَاوَاتِ وَلَا فِي الْأَرْضِ ۚ إِنَّهُ كَانَ عَلِيمًا قَدِيرًا ﴿٤٤﴾

४४) के उनीहरूले धरतीमा घुम फिर गर्दैनन् । जसबाट देखुन् कि उनीहरूको परिणाम के भयो ? जो यिनी भन्दा पहिला थिए र यिनीहरूभन्दा शक्तिमा धेरै बढी थिए । र अल्लाह यस्तो छैन कि आकाशहरूमा र धरतीमा कुनै कुराले उसलाई हराई देओस् । ऊ ठूलो सर्वज्ञ, सामर्थ्यवान छ ।

وَلَوْ يُؤَاخِذُ اللَّهُ النَّاسَ بِمَا كَسَبُوا مَا تَرَكَ عَلَىٰ ظَهْرِهَا مِن دَابَّةٍ وَلَٰكِن يُؤَخِّرُهُمْ إِلَىٰ أَجَلٍ مُّسَمًّى ۖ فَإِذَا جَاءَ أَجَلُهُمْ فَإِنَّ اللَّهَ كَانَ بِعِبَادِهِ بَصِيرًا ﴿٤٥﴾

४५) र यदि अल्लाहले मानिसहरूलाई उनीहरूको आचरणको कारण समात्न थालेको भए धरतीको कुनै जीवधारीलाई पनि छोडने थिएन । तर अल्लाहले उनीहरूलाई एक निश्चित समयसम्म अवसर दिएको छ । अनि जब उनीहरूको निर्धारित समय आइपुग्नेछ त निश्चय नै अल्लाह आफ्ना सेवकहरूलाई हेरिसक्ने छ ।



# सूरतु यासीन-३६



सूरतु यासीन मक्की हो र यसमा ८३ आयतहरू र ५ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) यासीन

يٰسٓ ۚ ﴿١﴾

२) कसम छ हिक्मत वाला कुरआनको

وَالْقُرْاٰنِ الْحَكِيْمِ ۙ ﴿٢﴾

३) (हे मोहम्मद !) नि:सन्देह तपाईं पैगम्बरहरूमध्ये कै हुनु हुन्छ,

اِنَّكَ لَمِنَ الْمُرْسَلِيْنَ ۙ ﴿٣﴾

४) सोझो मार्गमा हुनु हुन्छ ।

عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ؕ ﴿٤﴾

५) (यो कुरआन) अल्लाह अत्यन्त शक्तिमान दयावान्ले अवतरित गरेको छ ।

تَنْزِيْلَ الْعَزِيْزِ الرَّحِيْمِ ۙ ﴿٥﴾

६) ताकि तपाईंले यस्ता मानिसहरूलाई डर देखाउनुस्, जसका बाउ-बाजेलाई डर देखाइएको थिएन, (यसकारण) उनीहरू लापरवाहीमा परिराखेका छन् ।

لِتُنْذِرَ قَوْمًا مَّاۤ اُنْذِرَ اٰبَآؤُهُمْ فَهُمْ غٰفِلُوْنَ ﴿٦﴾

७) उनीहरूमध्ये धेरै मानिसहरूमाथि कुरो प्रमाणित भइसकेको छ । अत: उनीहरूले ईमान ल्याउने छैनन् ।

لَقَدْ حَقَّ الْقَوْلُ عَلٰۤى اَكْثَرِهِمْ فَهُمْ لَا يُؤْمِنُوْنَ ﴿٧﴾

८) हामीले उनीहरूका घाँटीमा तौक (पट्टा) हालीदिएका छौं र तिनीहरू चिउँडोसम्म छन् । तसर्थ उनीहरू टाउको निहुर्‍याउन सक्दैनन् ।

اِنَّا جَعَلْنَا فِیْۤ اَعْنَاقِهِمْ اَغْلٰلًا فَهِیَ اِلَى الْاَذْقَانِ فَهُمْ مُّقْمَحُوْنَ ﴿٨﴾

९) र हामीले उनीहरूको अगाडि एउटा

وَجَعَلْنَا مِنْۢ بَيْنِ اَيْدِيْهِمْ سَدًّا وَّمِنْ خَلْفِهِمْ

سَدًّا فَأَغْشَيْنٰهُمْ فَهُمْ لَا يُبْصِرُوْنَ ۝٩

परदा हालि दिएका छौं र उनको पछाडि पनि । जसबाट उनीहरूलाई ढाँपिदिएका छौं । तसर्थ यिनीहरूले देख्न सक्दैनन् ।

وَسَوَآءٌ عَلَيْهِمْ ءَاَنْذَرْتَهُمْ اَمْ لَمْ تُنْذِرْهُمْ لَا يُؤْمِنُوْنَ ۝١٠

१०) र तपाईंले उनीहरूलाई डराउनुस् वा नडराउनुस्, उनीहरूको लागि दुवै बराबर छ, उनीहरूले ईमान ल्याउने छैनन् ।

اِنَّمَا تُنْذِرُ مَنِ اتَّبَعَ الذِّكْرَ وَخَشِيَ الرَّحْمٰنَ بِالْغَيْبِ ۚ فَبَشِّرْهُ بِمَغْفِرَةٍ وَّاَجْرٍ كَرِيْمٍ ۝١١

११) तपाईंले त मात्र त्यस्तो व्यक्तिलाई डराउन सक्नु हुन्छ जसले उपदेशको अनुशरण गर्दछ र अल्लाहसित अदृश्य(अवस्था) मै डर्छ । अतः तपाईंले उसलाई क्षमा र सम्मानजनक प्रतिफलको शुभ-सूचना सुनाई दिनुस् ।

اِنَّا نَحْنُ نُحْيِ الْمَوْتٰى وَنَكْتُبُ مَا قَدَّمُوْا وَاٰثَارَهُمْ ۣ وَكُلَّ شَيْءٍ اَحْصَيْنٰهُ فِيْٓ اِمَامٍ مُّبِيْنٍ ۝١٢

१२) निःसन्देह हामीले मूर्दाहरूलाई जीवित गर्ने छौं र जेजति उनीहरूले अगाडि (आफनो कर्म) पठाइसकेका छन् र उनका ती कार्यहरू जुन पछाडि छोडेका छन्, हामीले उनलाई लेखिदिन्छौं । र हरेक कुरालाई हामीले एक स्पष्ट किताबमा लेखिसकेका छौं ।

وَاضْرِبْ لَهُمْ مَّثَلًا اَصْحٰبَ الْقَرْيَةِ ۘ اِذْ جَآءَهَا الْمُرْسَلُوْنَ ۝١٣

१३) र उनीहरूसित तपाईंले गाउँवालाहरूको घटनाको वर्णन गर्नुस्, जब उनको पासमा (अनेकौं) पैगम्बर आए ।

اِذْ اَرْسَلْنَآ اِلَيْهِمُ اثْنَيْنِ فَكَذَّبُوْهُمَا فَعَزَّزْنَا بِثَالِثٍ فَقَالُوْٓا اِنَّآ اِلَيْكُمْ مُّرْسَلُوْنَ ۝١٤

१४) जब हामीले उनीहरूकहाँ दुई (पैगम्बर) पठायौं, तब उनीहरूले

भूठा भने तब हामीले एउटा तेस्रोद्वारा पुष्टि गरायौं, तब उनी तीनै जनाले भने: "कि हामी तिमीतिर (संदेष्टा) पठाइएका हौं ।"

قَالُوا مَآ أَنتُمْ إِلَّا بَشَرٌ مِّثْلُنَا وَمَآ أَنزَلَ الرَّحْمَٰنُ مِن شَيْءٍ إِنْ أَنتُمْ إِلَّا تَكْذِبُونَ ﴿١٥﴾

१५) उनीहरूले भने कि "तिमी त हामी जस्तै साधारण मनुष्य हौ । र अल्लाहले कुनै कुरा पनि अवतरित गरेको छैन । तिमीमात्र भूठो बोल्दछौ ।"

قَالُوا رَبُّنَا يَعْلَمُ إِنَّآ إِلَيْكُمْ لَمُرْسَلُونَ ﴿١٦﴾

१६) ती रसूलहरूले भने "हाम्रो पालनकर्तालाई थाहा छ कि हामी निश्चय नै तिमीतिर पठाइएका हौं ।

وَمَا عَلَيْنَآ إِلَّا الْبَلَٰغُ الْمُبِينُ ﴿١٧﴾

१७) र हाम्रो जिम्मेवारी त मात्र स्पष्ट रूपले सन्देश पुऱ्याईदिनु नै हो ।

قَالُوٓا إِنَّا تَطَيَّرْنَا بِكُمْ لَئِن لَّمْ تَنتَهُوا لَنَرْجُمَنَّكُمْ وَلَيَمَسَّنَّكُم مِّنَّا عَذَابٌ أَلِيمٌ ﴿١٨﴾

१८) उनीहरूले भने: कि "हामीले त तिमीलाई अपशकुन मान्यौं अत: तिमी मानेनौ भने हामीले तिमीलाई ढुङ्गा हानेर मारिदिनेछौं र तिमीलाई हाम्रो तर्फबाट धेरै कष्ट पुग्नेछ ।

قَالُوا طَٰٓئِرُكُم مَّعَكُمْ أَئِن ذُكِّرْتُم بَلْ أَنتُمْ قَوْمٌ مُّسْرِفُونَ ﴿١٩﴾

१९) ती रसूलहरूले भने: कि तिम्रो अपशकुन त तिम्रो आफ्नै साथमा छ । के तिमी नसीहत गरिने कुरालाई अपशकुन सम्भन्छौ बरु तिमीहरू सीमा बाहिर जाने मानिसहरू हौ ।

وَجَآءَ مِنْ أَقْصَا الْمَدِينَةِ رَجُلٌ يَسْعَىٰ قَالَ يَٰقَوْمِ اتَّبِعُوا الْمُرْسَلِينَ ﴿٢٠﴾

२०) (यसैबीच) नगरको दुरवर्ती छेउबाट एउटा व्यक्ति दगुर्दै आइपुग्यो । उसले भन्यो: "हे मेरा कौम (जाति बन्धु)

का मानिसहरू ! यी रसूलहरूको मार्गमा हिँड्ने गर ।''

२१) यस्ताको मार्गमा हिड्ने गर जसले तिमीसित कुनै पारिश्रमिक माग्दैनन् र उनीहरू सोझो मार्गमा छन् ।

اتَّبِعُوا مَن لَّا يَسْأَلُكُمْ أَجْرًا وَهُم مُّهْتَدُونَ ﴿٢١﴾

२२) ''र मलाई के भएको छ कि म उसको बन्दगी (उपासना) नगरूँ ? जसले मलाई पैदा गऱ्यो र उसैतिर तिमी सबैले फर्केर जानुपर्नेछ ?''

وَمَا لِيَ لَا أَعْبُدُ الَّذِي فَطَرَنِي وَإِلَيْهِ تُرْجَعُونَ ﴿٢٢﴾

२३) के मैले उसलाई छाडेर अरुलाई उपास्य बनाऊँ ? यदि अल्लाहले मलाई कुनै कष्ट पुऱ्याउन चाहन्छ भने उनीहरूको सिफारिश मेरो कुनै काम आउन सक्दैन र नत उनीहरूले मलाई बचाउन सक्दछन् ।

أَأَتَّخِذُ مِن دُونِهِ آلِهَةً إِن يُرِدْنِ الرَّحْمَٰنُ بِضُرٍّ لَّا تُغْنِ عَنِّي شَفَاعَتُهُمْ شَيْئًا وَلَا يُنقِذُونِ ﴿٢٣﴾

२४) अनि त म अवश्य नै स्पष्ट मार्ग विचलनमा परिहाल्नेछु ।

إِنِّي إِذًا لَّفِي ضَلَالٍ مُّبِينٍ ﴿٢٤﴾

२५) मेरो सुन । म त तिम्रो पालनकर्तामाथि सच्चा मनले ईमान ल्याइहालें, अतः मेरो कुरा सुन ।''

إِنِّي آمَنتُ بِرَبِّكُمْ فَاسْمَعُونِ ﴿٢٥﴾

२६) आदेश भयोः ''कि स्वर्गमा प्रवेश गरिहाल ।'' भन्यो, काश ! मेरो जातिबन्धुलाई पनि खबर भइदिएको भए,

قِيلَ ادْخُلِ الْجَنَّةَ ۖ قَالَ يَا لَيْتَ قَوْمِي يَعْلَمُونَ ﴿٢٦﴾

२७) कि अल्लाहले मलाई क्षमा प्रदान गऱ्यो र प्रतिष्ठित मानिसहरूमा शम्मिलित गऱ्यो ।''

بِمَا غَفَرَ لِي رَبِّي وَجَعَلَنِي مِنَ الْمُكْرَمِينَ ﴿٢٧﴾

२८) त्यस पश्चात उसको समुदाय माथि हामीले आकाशबाट कुनै सेना उतारेनौं र हामीले यसप्रकार उतार्ने पनि गर्दैनौं ।

وَمَآ اَنْزَلْنَا عَلٰى قَوْمِهٖ مِنْ بَعْدِهٖ مِنْ جُنْدٍ مِّنَ السَّمَآءِ وَمَا كُنَّا مُنْزِلِيْنَ ۝٢٨

२९) त्यो त मात्र एउटा प्रचण्ड चित्कार थियो । सो उनीहरू सबै एक्कासी निभिहाले ।

اِنْ كَانَتْ اِلَّا صَيْحَةً وَّاحِدَةً فَاِذَا هُمْ خٰمِدُوْنَ ۝٢٩

३०) अफसोच छ (यस्ता) सेवकहरूमाथि ! कि जो रसूल पनि उनीहरूको पासमा आयो, उनीहरूले उसको उपहास गरे ।

يٰحَسْرَةً عَلَى الْعِبَادِ ۚ مَا يَاْتِيْهِمْ مِّنْ رَّسُوْلٍ اِلَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ۝٣٠

३१) के उनीहरूले देखेनन् कि उनीहरूभन्दा पहिला कति नस्लहरूलाई हामीले नष्ट गर्‍यौं, अब तिनीहरू उनीतिर फर्केर आउनेछैनन् ।

اَلَمْ يَرَوْا كَمْ اَهْلَكْنَا قَبْلَهُمْ مِّنَ الْقُرُوْنِ اَنَّهُمْ اِلَيْهِمْ لَا يَرْجِعُوْنَ ۝٣١

३२) जति पनि समूह छन् सबै हाम्रै, सम्मुख उपस्थित गराइनेछन् ।

وَاِنْ كُلٌّ لَّمَّا جَمِيْعٌ لَّدَيْنَا مُحْضَرُوْنَ ۝٣٢

३३) र एउटा निशानी उनीहरूको लागि सुख्खाभूमि हो । हामीले त्यसलाई जीवित पार्‍यौं र त्यसबाट अन्न उब्जायौं, जसबाट यिनीहरू खान्छन् ।

وَاٰيَةٌ لَّهُمُ الْاَرْضُ الْمَيْتَةُ ۚ اَحْيَيْنٰهَا وَاَخْرَجْنَا مِنْهَا حَبًّا فَمِنْهُ يَاْكُلُوْنَ ۝٣٣

३४) र हामीले त्यसमा खजूर र अँगूरहरूको बगैंचाहरू पैदा गर्‍यौं र त्यसमा हामीले झरना जारी गरिदिएका छौं,

وَجَعَلْنَا فِيْهَا جَنّٰتٍ مِّنْ نَّخِيْلٍ وَّاَعْنَابٍ وَّفَجَّرْنَا فِيْهَا مِنَ الْعُيُوْنِ ۝٣٤

३५) ताकि मानिसहरूले त्यसका फल खाउन् र उनका हातहरूले त्यसलाई

لِيَاْكُلُوْا مِنْ ثَمَرِهٖ ۙ وَمَا عَمِلَتْهُ اَيْدِيْهِمْ ۗ اَفَلَا يَشْكُرُوْنَ ۝٣٥

बनाएको होइन अनि फेरि किन उनीहरूले आभार प्रकट गर्दैनन् ?

३६) अति पवित्र छ अल्लाह जसले सबैको जोडी सृष्टि गऱ्यो,चाहे त्यो माटोमा उमारिएका कुराहरू होऊन् र स्वयम् तिनीहरूका (अस्तित्व) चिन्हहरू होऊन् चाहे ती वस्तुहरू होउन् जसबारे तिनीहरू जान्दैनन् ।

سُبْحٰنَ الَّذِيْ خَلَقَ الْاَزْوَاجَ كُلَّهَا مِمَّا تُنْۢبِتُ الْاَرْضُ وَمِنْ اَنْفُسِهِمْ وَمِمَّا لَا يَعْلَمُوْنَ ﴿٣٦﴾

३७) र उनीहरूका लागि एउटा निशानी रात हो । जसबाट हामीले दिनलाई तानि हाल्छौं, अनि त्यसबेला उनीहरू एक्कासी अँध्यारोमा पर्न जान्छन् ।

وَاٰيَةٌ لَّهُمُ الَّيْلُ ۚۖ نَسْلَخُ مِنْهُ النَّهَارَ فَاِذَا هُمْ مُّظْلِمُوْنَ ﴿٣٧﴾

३८) र सूर्य आफ्नो निर्धारित मार्गमा हिँडिराख्छ । यो निर्धारित गरिएको हो, अधिपत्यशाली, सर्वज्ञानी अल्लाहको तर्फबाट ।

وَالشَّمْسُ تَجْرِيْ لِمُسْتَقَرٍّ لَّهَا ۗ ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ﴿٣٨﴾

३९) र चन्द्रको हामीले ठाउँहरू निर्धारित गरेका छौं, यहाँसम्म कि फर्केर (घट्दै-घट्दै) पूरानो हाँगाको जस्तै भइहाल्छ ।

وَالْقَمَرَ قَدَّرْنٰهُ مَنَازِلَ حَتّٰى عَادَ كَالْعُرْجُوْنِ الْقَدِيْمِ ﴿٣٩﴾

४०) न सूर्यबाट नै यो हुनसक्छ कि उसले चाँदलाई गएर समातिहालोस् र न रात नै दिनभन्दा पहिला आउन सक्छ । र सबै आफ्ना परिधिमा आकाशमा घुमिराखेका छन् ।

لَا الشَّمْسُ يَنْۢبَغِيْ لَهَآ اَنْ تُدْرِكَ الْقَمَرَ وَلَا الَّيْلُ سَابِقُ النَّهَارِ ۗ وَكُلٌّ فِيْ فَلَكٍ يَّسْبَحُوْنَ ﴿٤٠﴾

४१) र एउटा निशानी उनीहरूको लागि यो छ कि हामीले उनीहरूका संततिलाई भरिएको डुङ्गामा सवार गऱ्यौं ।

وَاٰيَةٌ لَّهُمْ اَنَّا حَمَلْنَا ذُرِّيَّتَهُمْ فِي الْفُلْكِ الْمَشْحُوْنِ ﴿٤١﴾

وَخَلَقْنَا لَهُم مِّن مِّثْلِهِ مَا يَرْكَبُونَ ﴿٤٢﴾

४२) र उनीहरूको निम्ति उसैको सदृश्य अरु पनि यस्ता कुराहरू सृष्टि गऱ्यौं, जसमाथि उनीहरू सवार हुन्छन् ।

وَإِن نَّشَأْ نُغْرِقْهُمْ فَلَا صَرِيخَ لَهُمْ وَلَا هُمْ يُنقَذُونَ ﴿٤٣﴾

४३) र यदि हामीले चाहेको भए उनीहरूलाई डुबाई दिन्थ्यौं, अनि न त उनीहरूको कोही याचना सुन्नेवाला हुनेछ र न उनलाई बचाइन्थ्यो,

إِلَّا رَحْمَةً مِّنَّا وَمَتَاعًا إِلَىٰ حِينٍ ﴿٤٤﴾

४४) तर हामी आफ्नो तर्फबाट दया गर्दछौं र एक निश्चित समयसम्म तिनीहरूलाई फाइदा दिई रहन्छौं ।

وَإِذَا قِيلَ لَهُمُ اتَّقُوا مَا بَيْنَ أَيْدِيكُمْ وَمَا خَلْفَكُمْ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿٤٥﴾

४५) र जब उनीहरूसित भनिन्छ कि पहिलाका र पछि हुने पापहरूबाट बाँच, ताकि तिमीमाथि दया गरियोस् ।

وَمَا تَأْتِيهِم مِّنْ آيَةٍ مِّنْ آيَاتِ رَبِّهِمْ إِلَّا كَانُوا عَنْهَا مُعْرِضِينَ ﴿٤٦﴾

४६) र उनीहरूको पासमा उनीहरूको पालनकर्ताका निशानीहरूमध्ये कुनै पनि निशानी यस्तो आएन जसबाट उनीहरू बेवास्ता नगरे ।

وَإِذَا قِيلَ لَهُمْ أَنفِقُوا مِمَّا رَزَقَكُمُ اللَّهُ قَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ آمَنُوا أَنُطْعِمُ مَن لَّوْ يَشَاءُ اللَّهُ أَطْعَمَهُ إِنْ أَنتُمْ إِلَّا فِي ضَلَالٍ مُّبِينٍ ﴿٤٧﴾

४७) र जब उनीसित भनिन्छ कि, "जुन जीविका तिमीलाई अल्लाहले दिएकोछ, त्यसमध्येबाट केही (दान) खर्च गर ।" त यी काफिरहरू मोमिनहरूसित भन्दछन्: कि "हामीले ती मानिसहरूलाई किन खुवाउने, जसलाई यदि अल्लाहले चाहेको भए स्वयम् खुवाइदिन्थ्यो ? तिमी त स्पष्ट भूलमा छौ ।"

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٤٨﴾

४८) तिनीहरू भन्दछन्: "कि यदि तिमी साँचो हौ भने बताऊ त्यो वचन कहिले पूरा हुनेछ ?"

| | |
|---|---|
| ४९) यिनीहरूले त एउटा ठूलो चित्कारको प्रतिक्षामा छन्, जसले उनीहरूलाई (त्यस अवस्थामा) आई समात्नेछ जब कि यिनीहरू एकआपसमा झगडा गरिराखेका हुनेछन् । | مَا يَنْظُرُوْنَ اِلَّا صَيْحَةً وَّاحِدَةً تَاْخُذُهُمْ وَهُمْ يَخِصِّمُوْنَ ﴿٤٩﴾ |
| ५०) फेरि त्यस बेला यिनीहरूले न त इच्छापत्र गर्न सक्ने छन् र नत आफ्ना घरवालाहरूतिर फर्कन सक्नेछन् । | فَلَا يَسْتَطِيْعُوْنَ تَوْصِيَةً وَّلَآ اِلٰٓى اَهْلِهِمْ يَرْجِعُوْنَ ﴿٥٠﴾ |
| ५१) र सूर (सिंगा) फूँकिने बित्तिकै यिनीहरू सबै आफ्ना चिहानहरूबाट (निस्केर) आफ्नो पालनकर्तातिर दर्गुर्नेछन् । | وَنُفِخَ فِى الصُّوْرِ فَاِذَا هُمْ مِّنَ الْاَجْدَاثِ اِلٰى رَبِّهِمْ يَنْسِلُوْنَ ﴿٥١﴾ |
| ५२) भन्नेछन्: "हाय-हाय कसले हामीलाई निद्राबाट जगाइदियो ? यही हो जसको रहमानले वचन दिएको थियो । र रसूलहरूले साँचो कुरा भनेका थिए" । | قَالُوْا يٰوَيْلَنَا مَنْ بَعَثَنَا مِنْ مَّرْقَدِنَا ٜ هٰذَا مَا وَعَدَ الرَّحْمٰنُ وَصَدَقَ الْمُرْسَلُوْنَ ﴿٥٢﴾ |
| ५३) अनि एउटा ठूलो चित्कार हुनेछ । त उनीहरू सबै अचानक हाम्रो सामु उपस्थित गराई हालिने छन् । | اِنْ كَانَتْ اِلَّا صَيْحَةً وَّاحِدَةً فَاِذَا هُمْ جَمِيْعٌ لَّدَيْنَا مُحْضَرُوْنَ ﴿٥٣﴾ |
| ५४) यस दिन कुनै व्यक्तिमाथि कुनै पनि अन्याय हुनेछैन र तिमीलाई प्रतिफलको रूपमा त्यही प्राप्त हुनेछ जुन तिमीले गर्दै आइरहेका थियौ । | فَالْيَوْمَ لَا تُظْلَمُ نَفْسٌ شَيْـًٔا وَّلَا تُجْزَوْنَ اِلَّا مَا كُنْتُمْ تَعْمَلُوْنَ ﴿٥٤﴾ |
| ५५) स्वर्गवालाहरू आजकोदिन कुनै न कुनै काममा व्यस्त भई आनन्द लिइराख्नेछन् । | اِنَّ اَصْحٰبَ الْجَنَّةِ الْيَوْمَ فِىْ شُغُلٍ فٰكِهُوْنَ ﴿٥٥﴾ |

५६) उनीहरू र उनका पत्नीहरू पनि छाँयामा पलंगहरूमा तकिया लगाएर बसेका हुनेछन् ।

هُمْ وَأَزْوَاجُهُمْ فِي ظِلَالٍ عَلَى الْأَرَائِكِ مُتَّكِئُونَ ﴿٥٦﴾

५७) त्यहाँ उनीहरूको निम्ति हरप्रकारका फलहरू हुनेछन् । र उनीहरू जे चाहन्छन् उपलब्ध हुनेछ ।

لَهُمْ فِيهَا فَاكِهَةٌ وَلَهُمْ مَا يَدَّعُونَ ﴿٥٧﴾

५८) दयावान् पालनकर्ताको तर्फबाट उनीहरूमाथि सलाम भनिनेछ ।

سَلَامٌ قَوْلًا مِنْ رَبٍّ رَحِيمٍ ﴿٥٨﴾

५९) र हे अपराधीहरू: आज तिमी अलग भइहाल ।

وَامْتَازُوا الْيَوْمَ أَيُّهَا الْمُجْرِمُونَ ﴿٥٩﴾

६०) हे आदमका सन्तति! के हामीले तिमीसित वचन लिएका थिएनौं ? कि तिमी शैतानको पूजा नगर्नु । निश्चय नै त्यो तिम्रो स्पष्ट शत्रु हो ।

أَلَمْ أَعْهَدْ إِلَيْكُمْ يَا بَنِي آدَمَ أَنْ لَا تَعْبُدُوا الشَّيْطَانَ إِنَّهُ لَكُمْ عَدُوٌّ مُبِينٌ ﴿٦٠﴾

६१) र मेरो नै उपासना गर्नु, यही नै सोझो बाटो हो ।

وَأَنِ اعْبُدُونِي هَذَا صِرَاطٌ مُسْتَقِيمٌ ﴿٦١﴾

६२) र शैतानले त तिमीहरूमध्ये धेरै प्राणीलाई पथभ्रष्ट गरिदियो के तिमी सँग बुद्धि थिएन ?

وَلَقَدْ أَضَلَّ مِنْكُمْ جِبِلًّا كَثِيرًا أَفَلَمْ تَكُونُوا تَعْقِلُونَ ﴿٦٢﴾

६३) यो त्यही नर्क हो जसको तिमीलाई वचन दिइएको थियो ।

هَذِهِ جَهَنَّمُ الَّتِي كُنْتُمْ تُوعَدُونَ ﴿٦٣﴾

६४) (तसर्थ) "तिमीले गरेको कुफ्रको बदला प्राप्त गर्न आज यसमा (नर्क) प्रवेश गरिहाल ।"

اصْلَوْهَا الْيَوْمَ بِمَا كُنْتُمْ تَكْفُرُونَ ﴿٦٤﴾

६५) आज हामीले उनका मुखहरूमा छाप लगाई दिनेछौं र जेजति यिनीहरूले गर्दै आएका थिए, उनीहरूका हातले

الْيَوْمَ نَخْتِمُ عَلَى أَفْوَاهِهِمْ وَتُكَلِّمُنَا أَيْدِيهِمْ وَتَشْهَدُ أَرْجُلُهُمْ بِمَا كَانُوا يَكْسِبُونَ ﴿٦٥﴾

हामीसित वर्णन गर्नेछन्, र उनका खुट्टाहरू साक्षी बन्नेछन् ।

६६) यदि हामीले चाहेको भए उनका आँखाहरू नष्ट (गरेर अन्धा बनाउन) गरिदिने थियौं । फेरि उनीहरू बाटोतिर दौडी रहन्थे तर उनीहरूले कसरी देख्न सक्दथे ?

وَلَوْ نَشَاءُ لَطَمَسْنَا عَلَىٰ أَعْيُنِهِمْ فَاسْتَبَقُوا الصِّرَاطَ فَأَنَّىٰ يُبْصِرُونَ ﴿٦٦﴾

६७) र यदि हामीले चाहेको भए उनीहरूको ठाउँमै उनीहरूको रूप बिगार्न सक्थ्यौं, अनि त्यहाँबाट उनीहरू न अगाडि जान सक्छन् न पछाडि फर्कन सक्नेछन् ।

وَلَوْ نَشَاءُ لَمَسَخْنَاهُمْ عَلَىٰ مَكَانَتِهِمْ فَمَا اسْتَطَاعُوا مُضِيًّا وَلَا يَرْجِعُونَ ﴿٦٧﴾

६८) र जसलाई हामीले दीर्घायु दिन्छौं, उसलाई उसको जन्मको अवस्थामा फर्काई दिन्छौं । के तिनीहरूले तैपनि बुझ्दैनन् ?।

وَمَنْ نُعَمِّرْهُ نُنَكِّسْهُ فِي الْخَلْقِ ۖ أَفَلَا يَعْقِلُونَ ﴿٦٨﴾

६९) न हामीले यस नबीलाई कविता सिकाएका छौं र न यो उसको लागि सुहाउँछ । यो त मात्र नसीहत र स्पष्ट कुरआन हो ।

وَمَا عَلَّمْنَاهُ الشِّعْرَ وَمَا يَنْبَغِي لَهُ ۚ إِنْ هُوَ إِلَّا ذِكْرٌ وَقُرْآنٌ مُبِينٌ ﴿٦٩﴾

७०) ताकि उसले त्यस्ता सबैलाई सचेत गरिदेओस् जो जीवित छन् । र काफिरहरूमाथि दुष्कर्म प्रमाणित भई जाओस् ।

لِيُنْذِرَ مَنْ كَانَ حَيًّا وَيَحِقَّ الْقَوْلُ عَلَى الْكَافِرِينَ ﴿٧٠﴾

७१) के उनीहरूले देखदैनन् ? कि हामीले उनीहरूको निम्ति आफ्नो हातबाट बनाइएका कुराहरूमध्ये चौपाया बनायौं र जसको अब उनीहरू स्वामी भएका छन् ।

أَوَلَمْ يَرَوْا أَنَّا خَلَقْنَا لَهُمْ مِمَّا عَمِلَتْ أَيْدِينَا أَنْعَامًا فَهُمْ لَهَا مَالِكُونَ ﴿٧١﴾

وَذَلَّلْنَاهَا لَهُمْ فَمِنْهَا رَكُوبُهُمْ وَمِنْهَا يَأْكُلُونَ ﴿٧٢﴾

७२) र ती पशुहरूलाई हामीले उनीहरूको आज्ञा पालक बनाई दियौं, जसमध्ये केही त उनीहरूका लागि सवारीको रूपमा छन् र तिनीहरूमध्ये केहीका मासु उनीहरूले खान्छन् ।

وَلَهُمْ فِيهَا مَنَافِعُ وَمَشَارِبُ ۖ أَفَلَا يَشْكُرُونَ ﴿٧٣﴾

७३) र उनीहरूको निम्ति तिनीहरूका लागि अरु कैयन् लाभ छन् र पेय पदार्थ पनि । त के तिनीहरूले कृतज्ञता प्रकट गर्दैनन् ?

وَاتَّخَذُوا مِن دُونِ اللَّهِ آلِهَةً لَّعَلَّهُمْ يُنصَرُونَ ﴿٧٤﴾

७४) र उनीहरूले अल्लाहलाई छाडि अरुलाई पूज्य बनाउँछन् ताकि त्यसबाट उनीहरूलाई मद्दत पुगोस् ।

لَا يَسْتَطِيعُونَ نَصْرَهُمْ وَهُمْ لَهُمْ جُندٌ مُّحْضَرُونَ ﴿٧٥﴾

७५) यद्यपि तिनीहरूले उनीहरूको मद्दतको क्षमता राख्दैनन्, तापनि मुश्रिकहरू उनीहरूको (बहुदेबवादीको) फौजको रूपमा उपस्थित छन् ।

فَلَا يَحْزُنكَ قَوْلُهُمْ ۘ إِنَّا نَعْلَمُ مَا يُسِرُّونَ وَمَا يُعْلِنُونَ ﴿٧٦﴾

७६) अतः उनीहरूको कुराले तपाईंलाई शोकाकूल नगरुन् । यिनीहरूले जेजति लुकाउँछन् र जेजति प्रकट गर्दछन्, हामीलाई राम्रोसँग प्रत्यक्ष, परोक्ष सबै थाहा छ ।

أَوَلَمْ يَرَ الْإِنسَانُ أَنَّا خَلَقْنَاهُ مِن نُّطْفَةٍ فَإِذَا هُوَ خَصِيمٌ مُّبِينٌ ﴿٧٧﴾

७७) के मानिसलाई यति पनि ज्ञान छैन कि हामीले उसलाई पानीको थोपाबाट सृष्टि गऱ्यौं ? अनि त्यो प्रत्यक्ष झगडालु बनिहाल्यो ।

وَضَرَبَ لَنَا مَثَلًا وَنَسِيَ خَلْقَهُ ۖ قَالَ مَن يُحْيِي الْعِظَامَ وَهِيَ رَمِيمٌ ﴿٧٨﴾

७८) र उसले हाम्रो बारेमा तुलना गर्न थाल्यो र आफ्नो पैदाइश (सृष्टि) लाई बिर्सिहाल्यो । भन्नथाल्यो कि:

(जब) "हाडहरू सडिगलि सक्नेछन् तब यिनलाई कसले जीवित गरिसक्नेछ ?"

قُلْ يُحْيِيهَا الَّذِيٓ أَنشَأَهَآ أَوَّلَ مَرَّةٍ ۖ وَهُوَ بِكُلِّ خَلْقٍ عَلِيمٌ ﴿٧٩﴾

७९) तपाईं जवाफ दिनुस् कि: "उनीहरूलाई उसले जीवित पार्ने छ, जसले उनीहरूलाई पहिलो पटक सृष्टि गरेको छ। जो प्रत्येक सृष्टिलाई राम्ररी जान्दछ।

الَّذِي جَعَلَ لَكُم مِّنَ الشَّجَرِ الْأَخْضَرِ نَارًا فَإِذَآ أَنتُم مِّنْهُ تُوقِدُونَ ﴿٨٠﴾

८०) उही हो जसले तिम्रो निम्ति हरियो वृक्षबाट आगो पैदा गरिदियो। त तिमीले त्यसद्वारा आगो सल्काउँछौ।"

أَوَلَيْسَ الَّذِي خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ بِقٰدِرٍ عَلَىٰٓ أَن يَخْلُقَ مِثْلَهُم ۚ بَلَىٰ وَهُوَ الْخَلّٰقُ الْعَلِيمُ ﴿٨١﴾

८१) जसले आकाशहरू र जमीनलाई सृष्टि गरेको छ, उसलाई सामर्थ्य छैन कि उनीहरू जस्तै फेरि सृष्टि गरिदेओस् ? किन होइन, जब कि त्यो महान् स्रष्टा अत्यन्त ज्ञानवान छ।

إِنَّمَآ أَمْرُهُۥٓ إِذَآ أَرَادَ شَيْـًٔا أَن يَقُولَ لَهُۥ كُن فَيَكُونُ ﴿٨٢﴾

८२) उसको गरिमा यो हो कि जब उसले कुनै कुराको (सृष्टि गर्ने) इच्छा गर्दछ तब उसले यति भन्नु प्रयाप्त हुन्छ कि, "भइहाल" ! र त्यो भइहाल्छ।

فَسُبْحٰنَ الَّذِي بِيَدِهِۦ مَلَكُوتُ كُلِّ شَيْءٍ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٨٣﴾

८३) अतः पवित्र छ त्यो अल्लाह, जसको हातमा प्रत्येक कुराको पूरा अधिकार छ। र उसैतिर तिमी फर्केर आउनेछौ।

## सूरतुस्साफ्फात-३७




सूरतुस्साफ्फात मक्की हो, यसमा १८२ आयतहरू र ५ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) कसम छ पंक्ति बाँध्नेवालाहरूको ।

وَالصّٰٓفّٰتِ صَفًّا ①

२) फेरि बलियो रूपले हप्काउनेवालाहरूको ।

فَالزّٰجِرٰتِ زَجْرًا ②

३) अनि कुरआन पढ्नेवालाहरूको ।

فَالتّٰلِيٰتِ ذِكْرًا ③

४) निःसन्देह तिमीहरू सबैको पूज्य एउटै छ ।

اِنَّ اِلٰـهَكُمْ لَوَاحِدٌ ④

५) आकाशहरू र धरती र जे-जति कुराहरू यिनमा छन्, सबैको र सम्पुर्ण पूर्वी दिशाहरूको मालिक पनि उही हो ।

رَبُّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا وَرَبُّ الْمَشَارِقِ ⑤

६) हामीले संसारीय आकाशलाई ताराहरूबाट सुसज्जित गर्‍यौं ।

اِنَّا زَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِزِيْنَةِ ِۨالْكَوَاكِبِ ⑥

७) अट्टेरी शैतानबाट सुरक्षित राख्नको निम्ति ।

وَحِفْظًا مِّنْ كُلِّ شَيْطٰنٍ مَّارِدٍ ⑦

८) माथिका फरिश्ताहरूको कुरा सुन्नका लागि तिनीहरूले कान लगाउन सक्तैनन् । अपितु सबैतिरबाट तिनीहरू मारिन्छन् ।

لَا يَسَّمَّعُوْنَ اِلَى الْمَلَاِ الْاَعْلٰى وَيُقْذَفُوْنَ مِنْ كُلِّ جَانِبٍ ⑧

९) र (त्यहाँबाट) धपाइनुलाई । उनीहरूको निम्ति स्थाई यातना छ ।

دُحُوْرًا وَّلَهُمْ عَذَابٌ وَّاصِبٌ ⑨

१०) हो, कसैले (स्वर्गदूतको कुरालाई)

اِلَّا مَنْ خَطِفَ الْخَطْفَةَ فَاَتْبَعَهٗ شِهَابٌ ثَاقِبٌ ⑩

यदि केही सुनी हाल्छ भने तुरुन्तै प्रज्वलित आगोको डल्लोले उसलाई पछ्याउँछ ।

فَاسْتَفْتِهِمْ أَهُمْ أَشَدُّ خَلْقًا أَمْ مَّنْ خَلَقْنَا ۚ إِنَّا خَلَقْنَاهُم مِّن طِينٍ لَّازِبٍ ﴿١١﴾

११) यी काफिरहरूसँग सोध कि के उनीहरूको सृष्टि गर्ने काम अधिक कठिन छ, वा ती अन्य कुराहरूको, जसलाई हामीले सृष्टि गरेका छौं । हामीले उनीहरूको सृष्टि (मानिसको) लेसिलो माटोले गर्‍यौं ।

بَلْ عَجِبْتَ وَيَسْخَرُونَ ﴿١٢﴾

१२) बरु तिमी त आश्चर्यमा छौ र उनीहरू उपहास गरिराखेका छन् ।

وَإِذَا ذُكِّرُوا لَا يَذْكُرُونَ ﴿١٣﴾

१३) र जब उनीहरूलाई उपदेश गरिन्छ त उनीहरूले मान्दैनन् ।

وَإِذَا رَأَوْا آيَةً يَسْتَسْخِرُونَ ﴿١٤﴾

१४) र जब कुनै निशानी (चमत्कार) देख्दछन् त खिल्ली उडाउँछन् ।

وَقَالُوا إِنْ هَٰذَا إِلَّا سِحْرٌ مُّبِينٌ ﴿١٥﴾

१५) र भन्दछन् : “यो त मात्र एउटा प्रत्यक्ष जादू हो ।

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَبْعُوثُونَ ﴿١٦﴾

१६) के जब हामीहरू मरिसकेका हुनेछौं र माटो र हड्डीको रूपमा परिणत हुनेछौं त के फेरि साँच्चै हामी उठाइनेछौं ?

أَوَآبَاؤُنَا الْأَوَّلُونَ ﴿١٧﴾

१७) के हामी भन्दा पहिलाका हाम्रा बाबु बाजे पनि ?”

قُلْ نَعَمْ وَأَنتُمْ دَاخِرُونَ ﴿١٨﴾

१८) तपाईं भनिदिनुस् कि “हो ! र तिमी अपमानित पनि हुनेछौ ।”

فَإِنَّمَا هِيَ زَجْرَةٌ وَاحِدَةٌ فَإِذَا هُمْ يَنظُرُونَ ﴿١٩﴾

१९) त्यो त एउटा ठूलो आवाज हुनेछ । कि यिनीहरू त्यसबेला अचानक देख्न थाल्नेछन् ।

२०) र भन्नेछन्: "अफसोच छ हामीलाई । यही नै प्रतिफलको दिन हो ।"

وَقَالُوا يَٰوَيْلَنَا هَٰذَا يَوْمُ الدِّينِ ﴿٢٠﴾

२१) यो नै निर्णयको दिन हो, जसलाई तिमीले झूठा ठान्दथ्यौ ।

هَٰذَا يَوْمُ الْفَصْلِ الَّذِي كُنتُم بِهِ تُكَذِّبُونَ ﴿٢١﴾

२२) अत्याचार गर्नेहरूलाई र उनका साथीहरूलाई र अल्लाह बाहेक जसका उनीहरूले पूजा गर्दथे ।

احْشُرُوا الَّذِينَ ظَلَمُوا وَأَزْوَاجَهُمْ وَمَا كَانُوا يَعْبُدُونَ ﴿٢٢﴾

२३) उनीहरू सबलाई जम्मा गरेर नर्कको बाटो देखाई देऊ ।

مِن دُونِ اللَّهِ فَاهْدُوهُمْ إِلَىٰ صِرَاطِ الْجَحِيمِ ﴿٢٣﴾

२४) र उनीहरूलाई रोकिराख, किनभने उनीहरूसित केही जरूरी प्रश्नहरू सोध्नुछ ।

وَقِفُوهُمْ إِنَّهُم مَّسْئُولُونَ ﴿٢٤﴾

२५) "तिमीहरूलाई के भएको छ कि यस बेला एक अर्काको सहायता गर्दैनौ ?"

مَا لَكُمْ لَا تَنَاصَرُونَ ﴿٢٥﴾

२६) बरु आज त उनीहरू सबै आज्ञाकारी बनेका छन् ।

بَلْ هُمُ الْيَوْمَ مُسْتَسْلِمُونَ ﴿٢٦﴾

२७) तिनीहरू एक-अर्कातिर फर्केर सवाल र जवाफ गर्नेछन् ।

وَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٢٧﴾

२८) भन्नेछन्: "तिमी त हाम्रो पासमा हाम्रो दायाँ तिरबाट आउँदथ्यौ ।"

قَالُوا إِنَّكُمْ كُنتُمْ تَأْتُونَنَا عَنِ الْيَمِينِ ﴿٢٨﴾

२९) उनीहरूले भन्नेछन्: होइन "बरु, तिमी नै ईमानवाला थिएनौ ।

قَالُوا بَل لَّمْ تَكُونُوا مُؤْمِنِينَ ﴿٢٩﴾

३०) र हाम्रो तिमीमाथि कुनै अधिकार त थिएन, बरु तिमीहरू अट्टेरी थियौ ।

وَمَا كَانَ لَنَا عَلَيْكُم مِّن سُلْطَانٍ بَلْ كُنتُمْ قَوْمًا طَاغِينَ ﴿٣٠﴾

३१) अब त हाम्रो सम्बन्धमा हाम्रो पालनकर्ताको यो कुरा पूरा भइहाल्यो

فَحَقَّ عَلَيْنَا قَوْلُ رَبِّنَا إِنَّا لَذَائِقُونَ ﴿٣١﴾

कि अब हामी सजायको स्वाद चाख्नेछौं ।

३२) अतः हामीले तिमीलाई पनि पथभ्रष्ट गऱ्यौं । हामी त स्वयं पनि मार्ग विचलित नै थियौं ।''

فَأَغْوَيْنَٰكُمْ إِنَّا كُنَّا غَٰوِينَ ﴿٣٢﴾

३३) अतः उनी सबै त्यसदिन सजायमा एक अर्काको सहभागी हुनेछन् ।

فَإِنَّهُمْ يَوْمَئِذٍ فِى ٱلْعَذَابِ مُشْتَرِكُونَ ﴿٣٣﴾

३४) हामीले अपराधीहरूसित यस्तै गर्ने गर्दछौं ।

إِنَّا كَذَٰلِكَ نَفْعَلُ بِٱلْمُجْرِمِينَ ﴿٣٤﴾

३५) उनीहरूको यो अवस्था थियो कि जब उनीहरूसित भनिन्थ्यो: ''कि अल्लाह बाहेक कोही सत्य उपास्य छैन'' तब तिनीहरू अवज्ञा गर्दथे ।

إِنَّهُمْ كَانُوٓا۟ إِذَا قِيلَ لَهُمْ لَآ إِلَٰهَ إِلَّا ٱللَّهُ يَسْتَكْبِرُونَ ﴿٣٥﴾

३६) र भन्दथे: ''के हामीले एउटा उन्मादी कविले भन्दैमा आफ्ना उपास्यहरूलाई छाडिदेऔं ?''

وَيَقُولُونَ أَئِنَّا لَتَارِكُوٓا۟ ءَالِهَتِنَا لِشَاعِرٍ مَّجْنُونٍ ﴿٣٦﴾

३७) ''होइन, बरु नबीले सत्य (धर्म) लिएर आएका छन् र (अघिका) रसूलहरूलाई सच्चा भन्दछन् ।

بَلْ جَآءَ بِٱلْحَقِّ وَصَدَّقَ ٱلْمُرْسَلِينَ ﴿٣٧﴾

३८) निश्चय नै तिमी दुःखद यातनाको स्वाद चाख्नेछौ ।

إِنَّكُمْ لَذَآئِقُوا۟ ٱلْعَذَابِ ٱلْأَلِيمِ ﴿٣٨﴾

३९) तिमीलाई त्यसैको प्रतिफल दिइनेछ जुन तिमीले गर्ने गर्दथ्यौ ।''

وَمَا تُجْزَوْنَ إِلَّا مَا كُنتُمْ تَعْمَلُونَ ﴿٣٩﴾

४०) तर जो अल्लाहका विशेष बन्दाहरू छन् ।

إِلَّا عِبَادَ ٱللَّهِ ٱلْمُخْلَصِينَ ﴿٤٠﴾

४१) उनीहरूका लागि अल्लाह द्वारा जीविका निर्धारित छ,

أُو۟لَٰٓئِكَ لَهُمْ رِزْقٌ مَّعْلُومٌ ﴿٤١﴾

فَوَاكِهُ ۚ وَهُمْ مُّكْرَمُونَ ﴿٤٢﴾

४२) हर प्रकारका फलफूल र गौरव र मर्यादाले उनको आदर गरिनेछ ।

فِي جَنَّاتِ النَّعِيمِ ﴿٤٣﴾

४३) अनुकम्पाले भरिएका जन्नतहरूमा,

عَلَىٰ سُرُرٍ مُّتَقَابِلِينَ ﴿٤٤﴾

४४) पलंगहरूमा आमुन्ने-सामुन्ने विराजमान हुनेछन्,

يُطَافُ عَلَيْهِم بِكَأْسٍ مِّن مَّعِينٍ ﴿٤٥﴾

४५) उनीहरूको माझमा विशुद्ध पेयको पात्र घुमाइने छ,

بَيْضَاءَ لَذَّةٍ لِّلشَّارِبِينَ ﴿٤٦﴾

४६) जुन कि सफा र पिउनेहरूको लागि सर्वथा सुस्वादक हुनेछ ।

لَا فِيهَا غَوْلٌ وَلَا هُمْ عَنْهَا يُنزَفُونَ ﴿٤٧﴾

४७) न त्यसबाट टाउको दुख्नेछ र न त्यसबाट मानिस नशामा बहकनेछन्,

وَعِندَهُمْ قَاصِرَاتُ الطَّرْفِ عِينٌ ﴿٤٨﴾

४८) र उनीहरूको पासमा अप्सराहरू हुनेछिन् जसको आँखा तल झुकेको र ठूला-ठूला हुने छन् ।

كَأَنَّهُنَّ بَيْضٌ مَّكْنُونٌ ﴿٤٩﴾

४९) मानौं उनीहरू सुरक्षित अण्डाहरू हुन्,

فَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٥٠﴾

५०) अनि उनीहरूले एक-अर्कातिर मुख फर्काएर सवाल गर्नेछन् ।

قَالَ قَائِلٌ مِّنْهُمْ إِنِّي كَانَ لِي قَرِينٌ ﴿٥١﴾

५१) उनीहरूमध्येबाट एउटाले भन्नेछः कि "मेरो एउटा साथी थियो ।

يَقُولُ أَإِنَّكَ لَمِنَ الْمُصَدِّقِينَ ﴿٥٢﴾

५२) जसले भन्दथ्यो, कि के तिमी पनि (कयामतलाई) मानिलिनेवाला मध्येका हौ ?

أَإِذَا مِتْنَا وَكُنَّا تُرَابًا وَعِظَامًا أَإِنَّا لَمَدِينُونَ ﴿٥٣﴾

५३) के जब हामी मरेर माटो र हड्डीमा परिणत भइसक्ने छौं तब के हामीलाई प्रतिफल प्राप्त हुनेछ ?"

قَالَ هَلْ أَنتُم مُّطَّلِعُونَ ﴿٥٤﴾

५४) (अनि) भन्नेछः “कि के तिमी उसलाई चियाएर हेर्न चाहन्छौ ?”

فَاطَّلَعَ فَرَآهُ فِي سَوَآءِ الْجَحِيمِ ﴿٥٥﴾

५५) (यसैबीच) त्यसले (स्वयम्) चियाउने छ, त उसलाई नर्कको माझमा (जलीरहेको) देख्नेछ ।

قَالَ تَاللَّهِ إِن كِدتَّ لَتُرْدِينِ ﴿٥٦﴾

५६) भन्नेछः कि, “अल्लाहको कसम ! तिमीले त मलाई बरबादै पार्ने थियौ ।

وَلَوْلَا نِعْمَةُ رَبِّي لَكُنتُ مِنَ الْمُحْضَرِينَ ﴿٥٧﴾

५७) यदि मेरो पालनकर्ताको कृपा नभएको भए त म पनि उनीहरूमध्येकै हुन्थें जो नर्कमा उपस्थित गराइएका छन् ।

أَفَمَا نَحْنُ بِمَيِّتِينَ ﴿٥٨﴾

५८) के (यो साँचो हो कि) हामी अब मर्ने छैनौं ?

إِلَّا مَوْتَتَنَا الْأُولَىٰ وَمَا نَحْنُ بِمُعَذَّبِينَ ﴿٥٩﴾

५९) पहिलो पटक मर्नु बाहेक । र हामीलाई यातना पनि हुनेवाला छैन”

إِنَّ هَٰذَا لَهُوَ الْفَوْزُ الْعَظِيمُ ﴿٦٠﴾

६०) अनि त स्पष्ट छ कि निःसन्देह यो ठूलो सफलता हो ।

لِمِثْلِ هَٰذَا فَلْيَعْمَلِ الْعَامِلُونَ ﴿٦١﴾

६१) यस्तो (सफलताहरू) का लागि कर्म गर्नेहरूले कर्म गर्नुपर्दछ ।

أَذَٰلِكَ خَيْرٌ نُّزُلًا أَمْ شَجَرَةُ الزَّقُّومِ ﴿٦٢﴾

६२) के यो आतिथ्य राम्रो छ वा थूहर (सिउँडी) को वृक्ष ?

إِنَّا جَعَلْنَاهَا فِتْنَةً لِّلظَّالِمِينَ ﴿٦٣﴾

६३) हामीले त्यस बृक्षलाई अत्याचारीहरूको निम्ति कष्टदायक परीक्षा बनाएका छौं,

إِنَّهَا شَجَرَةٌ تَخْرُجُ فِي أَصْلِ الْجَحِيمِ ﴿٦٤﴾

६४) निःसंदेह त्यो एउटा रुख हो जो जहन्नमको तल्लो भाग (जरा) बाट उम्रने छ,

طَلْعُهَا كَأَنَّهُ رُءُوسُ الشَّيٰطِينِ ﴿٦٥﴾

६५) त्यसका हाँगाहरू शैतानका टाउकोहरू जस्ता हुन्छन् ।

فَإِنَّهُمْ لَاٰكِلُونَ مِنْهَا فَمَالِـُٔونَ مِنْهَا الْبُطُونَ ﴿٦٦﴾

६६) नर्कवालाहरू उसैबाट खान्छन् र उसैबाट पेट भर्नेछन् ।

ثُمَّ إِنَّ لَهُمْ عَلَيْهَا لَشَوْبًا مِّنْ حَمِيمٍ ﴿٦٧﴾

६७) अनि त्यस (खाना) को साथमा उनलाई तातो पानी मिसाएर दिइनेछ ।

ثُمَّ إِنَّ مَرْجِعَهُمْ لَإِلَى الْجَحِيمِ ﴿٦٨﴾

६८) अनि उनीहरूलाई नर्क (आगोको ढिस्को) तिर फर्काइनेछ ।

إِنَّهُمْ أَلْفَوْا اٰبَآءَهُمْ ضَآلِّينَ ﴿٦٩﴾

६९) निश्चित मान्नुस् उनीहरूले आफ्ना बाबु-बाजेहरूलाई मार्ग विचलित नै पाए ।

فَهُمْ عَلٰٓى اٰثٰرِهِمْ يُهْرَعُونَ ﴿٧٠﴾

७०) र: उनीहरू तिनीहरूकै पद-चिन्हमा दगुरिराखेका छन् ।

وَلَقَدْ ضَلَّ قَبْلَهُمْ أَكْثَرُ الْأَوَّلِينَ ﴿٧١﴾

७१) उनीहरूभन्दा पहिला पनि धेरै मानिसहरू मार्ग विचलित भइसकेका छन्,

وَلَقَدْ أَرْسَلْنَا فِيهِمْ مُّنْذِرِينَ ﴿٧٢﴾

७२) जसमा हामीले उनीहरूको माझमा सचेत गर्नेवाला (रसूल) पठाएका थियौं,

فَانْظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُنْذَرِينَ ﴿٧٣﴾

७३) तसर्थ हेरिहाल कि जसलाई सचेत गरिएको थियो, उनीहरूको परिणाम कस्तो भयो ?

إِلَّا عِبَادَ اللّٰهِ الْمُخْلَصِينَ ﴿٧٤﴾

७४) हो, अल्लाहका विशिष्ट दासहरू बाहेक (उनको परिणाम धेरै राम्रो भयो)।

وَلَقَدْ نَادٰىنَا نُوحٌ فَلَنِعْمَ الْمُجِيبُونَ ﴿٧٥﴾

७५) र हामीलाई “नूह(अ.)ले” पुकारे, हेर हामी कस्तो राम्ररी याचना स्वीकार गर्नेवाला हौं ।

७६) हामीले उनलाई र उनका घरवालालाई ठूलो (महान् जलप्रल्य) विपत्तिबाट बचायौं ।

وَنَجَّيْنٰهُ وَاَهْلَهٗ مِنَ الْكَرْبِ الْعَظِيْمِ ۝٧٦

७७) र हामीले उनको सन्ततिलाई बाँकी रहनेवाला बनायौं ।

وَجَعَلْنَا ذُرِّيَّتَهٗ هُمُ الْبٰقِيْنَ ۝٧٧

७८) र हामीले उनको सुचर्चा पछि आउनेवालाहरूमा बाँकी राख्यौं ।

وَتَرَكْنَا عَلَيْهِ فِى الْاٰخِرِيْنَ ۝٧٨

७९) सम्पूर्ण संसारहरूमा नूह(अ.)माथि “सलाम” होस् ।

سَلٰمٌ عَلٰى نُوْحٍ فِى الْعٰلَمِيْنَ ۝٧٩

८०) नि:सन्देह हामीले भलाईको कार्य गर्नेहरूलाई यस्तै पुरस्कार दिन्छौं ।

اِنَّا كَذٰلِكَ نَجْزِى الْمُحْسِنِيْنَ ۝٨٠

८१) उनी हाम्रा ईमानवाला सेवकहरू मध्येका थिए ।

اِنَّهٗ مِنْ عِبَادِنَا الْمُؤْمِنِيْنَ ۝٨١

८२) अनि हामीले अरुहरूलाई डुबाइदिऔं ।

ثُمَّ اَغْرَقْنَا الْاٰخَرِيْنَ ۝٨٢

८३) र “इब्राहीम” पनि उनैका सहधर्मीहरूमध्येका थिए ।

وَاِنَّ مِنْ شِيْعَتِهٖ لَاِبْرٰهِيْمَ ۝٨٣

८४) जब उनी आफ्नो पालनकर्ताको समक्ष विकार रहित हृदय लिएर आए,

اِذْ جَآءَ رَبَّهٗ بِقَلْبٍ سَلِيْمٍ ۝٨٤

८५) जब उनले आफ्नो पिता र आफ्नो जाति बन्धुका मानिसहरूसित भने: “तिमीले कुन कुराको पूजा गर्दछौ ?”

اِذْ قَالَ لِاَبِيْهِ وَقَوْمِهٖ مَاذَا تَعْبُدُوْنَ ۝٨٥

८६) के तिमी अल्लाह बाहेक मनगढन्ते उपास्यहरू चाहिरहेका छौ ?

اَئِفْكًا اٰلِهَةً دُوْنَ اللّٰهِ تُرِيْدُوْنَ ۝٨٦

८७) यो बताऊ कि तिमीले आखिर सम्पूर्ण संसारको पालनकर्तालाई के सम्झेका छौ ?

فَمَا ظَنُّكُمْ بِرَبِّ الْعٰلَمِيْنَ ۝٨٧

८८) अब उनले ताराहरूमाथि दृष्टिपात गरे ।

فَنَظَرَ نَظْرَةً فِي النُّجُومِ ﴿٨٨﴾

८९) र भने: म त बिरामी छु ।''

فَقَالَ إِنِّي سَقِيمٌ ﴿٨٩﴾

९०) यसपछि उनीहरूले पिठ्यू फर्काई उनलाई छाडेर फर्कीहाले ।

فَتَوَلَّوْا عَنْهُ مُدْبِرِينَ ﴿٩٠﴾

९१) अनि (इब्राहीम अ.) उनीहरूका उपास्यतिर तत्काल गए र भन्नथाले कि: तिमीले खाना किन खाँदैनौ ?

فَرَاغَ إِلَىٰ آلِهَتِهِمْ فَقَالَ أَلَا تَأْكُلُونَ ﴿٩١﴾

९२) तिमीलाई के भएको छ ? कि तिमी बोल्दैनौ ?''

مَا لَكُمْ لَا تَنْطِقُونَ ﴿٩٢﴾

९३) अनि पूरै शक्तिका साथ उनीहरूलाई दाहिनेहातले पिटन शुरू गरे

فَرَاغَ عَلَيْهِمْ ضَرْبًا بِالْيَمِينِ ﴿٩٣﴾

९४) तब उनीहरू उनको पासमा दगुर्दै आए ।

فَأَقْبَلُوا إِلَيْهِ يَزِفُّونَ ﴿٩٤﴾

९५) उनले भने: ''तिमीहरूले यस्तो कुराको किन पूजा गर्छौ ? जसलाई तिमीले स्वयम् कुँदेर बनाउँछौ ।

قَالَ أَتَعْبُدُونَ مَا تَنْحِتُونَ ﴿٩٥﴾

९६) जब कि तिमीलाई र तिमीले बनाएका कुराहरूलाई अल्लाहले नै सृष्टि गरेको छ ?''

وَاللَّهُ خَلَقَكُمْ وَمَا تَعْمَلُونَ ﴿٩٦﴾

९७) उनीहरूले भने: ''उसको निम्ति एउटा भवन (अग्निकुण्ड) तयार पारी त्यसलाई प्रज्वलित आगोमा हालिदेऊ'' ।

قَالُوا ابْنُوا لَهُ بُنْيَانًا فَأَلْقُوهُ فِي الْجَحِيمِ ﴿٩٧﴾

९८) उनीहरूले त इब्राहीम (अ.) सँग एउटा षडयन्त्र गर्न चाहे तर हामीले उनीहरूलाई नै अपमानित गऱ्यौं ।

فَأَرَادُوا بِهِ كَيْدًا فَجَعَلْنَاهُمُ الْأَسْفَلِينَ ﴿٩٨﴾

وَقَالَ إِنِّي ذَاهِبٌ إِلَىٰ رَبِّي سَيَهْدِينِ ﴿٩٩﴾

९९) र इब्राहीम(अ.)ले भने: म त प्रवास गरेर आफ्नो पालनकर्तातिर गइराखेको छु, उसले अवश्य मेरो मार्गदर्शन गर्नेछ ।

رَبِّ هَبْ لِي مِنَ الصَّالِحِينَ ﴿١٠٠﴾

१००) हे मेरो पालनकर्ता ! मलाई असल सन्तान प्रदान गर ।''

فَبَشَّرْنَاهُ بِغُلَامٍ حَلِيمٍ ﴿١٠١﴾

१०१) तब हामीले उनलाई एउटा सहनशील पुत्रको शुभ-सूचना दियौं ।

فَلَمَّا بَلَغَ مَعَهُ السَّعْيَ قَالَ يَا بُنَيَّ إِنِّي أَرَىٰ فِي الْمَنَامِ أَنِّي أَذْبَحُكَ فَانظُرْ مَاذَا تَرَىٰ ۚ قَالَ يَا أَبَتِ افْعَلْ مَا تُؤْمَرُ ۖ سَتَجِدُنِي إِن شَاءَ اللَّهُ مِنَ الصَّابِرِينَ ﴿١٠٢﴾

१०२) अनि जब त्यो बच्चा उनको साथमा दौडधूप गर्ने अवस्थामा पुग्यो तब उनले भने: ''हे मेरो प्रिय छोरा ! मैले सपनामा देखेको छु कि तिमीलाई कुर्बान (बलि) गरिराखेको छु । त अब हेर, तिम्रो के विचार छ ? ''छोराले भन्यो कि: हे बुबा ! जुन आदेश तपाईलाईं दिइराखिएको छ त्यसको पालना गरिहाल्नुस् । अल्लाहले चाह्यो भने तपाईंले मलाई धैर्यवान् पाउनुहुनेछ ।

فَلَمَّا أَسْلَمَا وَتَلَّهُ لِلْجَبِينِ ﴿١٠٣﴾

१०३) अर्थात जब दुवैले आदेश मानिहाले, र बाबुले छोरालाई कन्चट तिर पारेर पल्टाए,

وَنَادَيْنَاهُ أَن يَا إِبْرَاهِيمُ ﴿١٠٤﴾

१०४) तब हामीले उनलाई पुकाऱ्यौं: कि, ''हे इब्राहीम !

قَدْ صَدَّقْتَ الرُّؤْيَا ۚ إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٠٥﴾

१०५) निश्चय नै तिमीले सपनालाई साँचो गरेर देखायौ । निःसन्देह हामीले उत्तम कार्यगर्नेहरूलाई यस्तै प्रकारले प्रतिफल दिन्छौं ।''

إِنَّ هَٰذَا لَهُوَ الْبَلَاءُ الْمُبِينُ ﴿١٠٦﴾

१०६) वास्तवमा यो त एउटा स्पष्ट परीक्षा थियो ।

وَفَدَيْنَاهُ بِذِبْحٍ عَظِيمٍ ﴿١٠٧﴾

१०७) र हामीले उसको (इस्माईल) सट्टामा कुर्बानीको लागि एउटा ठूलो (पशु) दियौं ।

وَتَرَكْنَا عَلَيْهِ فِي الْآخِرِينَ ﴿١٠٨﴾

१०८) र हामीले पछि आउने नस्लहरूमा (इब्राहीमको राम्रो) चर्चा बाँकी राख्यौं ?

سَلَامٌ عَلَىٰ إِبْرَاهِيمَ ﴿١٠٩﴾

१०९) "इब्राहीम (अ.) माथि सलाम होस् ।"

كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١١٠﴾

११०) असल कार्य गर्नेहरूलाई हामीले यस्तै प्रतिफल दिने गर्छौं ।

إِنَّهُ مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ﴿١١١﴾

१११) निश्चय नै उनी हाम्रा ईमानवाला सेवकहरूमध्येका थिए,

وَبَشَّرْنَاهُ بِإِسْحَاقَ نَبِيًّا مِنَ الصَّالِحِينَ ﴿١١٢﴾

११२) र हामीले उनलाई "इस्हाक(अ.)को" नबी हुने शुभ-सूचना पनि दियौं, जो असल मानिसहरूमध्ये हुनेछन् ।

وَبَارَكْنَا عَلَيْهِ وَعَلَىٰ إِسْحَاقَ ۚ وَمِنْ ذُرِّيَّتِهِمَا مُحْسِنٌ وَظَالِمٌ لِنَفْسِهِ مُبِينٌ ﴿١١٣﴾

११३) र हामीले उनलाई र "इस्हाकलाई" बरकत दियौं र ती दुवैका सन्तानहरूमा कतिपय त असल काम गर्नेहरू पनि छन्, र कतिपय आफूमाथि खुल्ला रूपले अत्याचार गर्नेवालाहरू पनि छन् ।

وَلَقَدْ مَنَنَّا عَلَىٰ مُوسَىٰ وَهَارُونَ ﴿١١٤﴾

११४) निःसंदेह हामीले मूसा (अ.) र हारून (अ.) माथि पनि ठूलो उपकार गरेका छौं ।

وَنَجَّيْنَاهُمَا وَقَوْمَهُمَا مِنَ الْكَرْبِ الْعَظِيمِ ﴿١١٥﴾

११५) र हामीले उनीहरूलाई र उनका जातिबन्धुहरूलाई ठूलो कष्टबाट मुक्त गर्‍यौं ।

وَنَصَرْنَٰهُمْ فَكَانُوا۟ هُمُ ٱلْغَٰلِبِينَ ﴿١١٦﴾

११६) र हामीले उनीहरूलाई सहायता गर्‍यौं, त उनीहरू प्रभावी रहे ।

وَءَاتَيْنَٰهُمَا ٱلْكِتَٰبَ ٱلْمُسْتَبِينَ ﴿١١٧﴾

११७) र हामीले उनीहरूलाई अत्यन्त स्पष्ट किताब प्रदान गर्‍यौं ।

وَهَدَيْنَٰهُمَا ٱلصِّرَٰطَ ٱلْمُسْتَقِيمَ ﴿١١٨﴾

११८) र हामीले उनीहरूलाई सोझो मार्गमा कायम राख्यौं ।

وَتَرَكْنَا عَلَيْهِمَا فِى ٱلْءَاخِرِينَ ﴿١١٩﴾

११९) र हामीले उनी दुवैका लागि पछि आउनेवाला नस्लहरूमा राम्रो चर्चा बाँकी राख्यौं ।

سَلَٰمٌ عَلَىٰ مُوسَىٰ وَهَٰرُونَ ﴿١٢٠﴾

१२०) "मूसा(अ.)" र हारून(अ.)माथि सलाम होस् ।

إِنَّا كَذَٰلِكَ نَجْزِى ٱلْمُحْسِنِينَ ﴿١٢١﴾

१२१) नि:सन्देह हामीले असल काम गर्नेहरूलाई यस्तै प्रतिफल दिनेगर्छौं ।

إِنَّهُمَا مِنْ عِبَادِنَا ٱلْمُؤْمِنِينَ ﴿١٢٢﴾

१२२) निश्चय नै ती दुवै हाम्रा ईमानवाला सेवकहरूमध्येका थिए ।

وَإِنَّ إِلْيَاسَ لَمِنَ ٱلْمُرْسَلِينَ ﴿١٢٣﴾

१२३) र "इलियास" पनि पैगम्बरहरू मध्येका थिए ।

إِذْ قَالَ لِقَوْمِهِۦٓ أَلَا تَتَّقُونَ ﴿١٢٤﴾

१२४) जब उहाँले आफ्ना जातिबन्धुसित भने: तिमी अल्लाहसित किन डर मान्दैनौ ?

أَتَدْعُونَ بَعْلًا وَتَذَرُونَ أَحْسَنَ ٱلْخَٰلِقِينَ ﴿١٢٥﴾

१२५) के तिमी बअ्ल (एउटा ठूलो मूर्ति)लाई पुकार्दछौ, र सर्वोत्तम स्रष्टालाई छाडिदिन्छौ ?

ٱللَّهَ رَبَّكُمْ وَرَبَّ ءَابَآئِكُمُ ٱلْأَوَّلِينَ ﴿١٢٦﴾

१२६) अल्लाह जो तिम्रा र तिम्रा बाबु-बाजेको पालनहार हो ।

فَكَذَّبُوهُ فَإِنَّهُمْ لَمُحْضَرُونَ ﴿١٢٧﴾

१२७) तर उनीहरूले उनलाई झूठा भने अत: उनीहरू अवश्य नर्कमा उपस्थित गराइनेछन् ।

१२८) हो, अल्लाहका असल सेवकहरू (सजायमा) पारिने छैनन् ।

إِلَّا عِبَادَ اللَّهِ الْمُخْلَصِينَ ﴿١٢٨﴾

१२९) हामीले "इलियास" (अ.) को राम्रो चर्चा पछि आउनेहरूमा (शेष) छाडेका छौं ।

وَتَرَكْنَا عَلَيْهِ فِي الْآخِرِينَ ﴿١٢٩﴾

१३०) कि "इलियास(अ.)" माथि "सलाम" होस् ।

سَلَامٌ عَلَىٰ إِلْ يَاسِينَ ﴿١٣٠﴾

१३१) हामीले भलाई गर्नेहरूलाई यस्तै प्रतिफल दिन्छौं ।

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿١٣١﴾

१३२) निःसन्देह उनी हाम्रा मोमिन सेवकहरूमध्येबाट थिए ।

إِنَّهُ مِنْ عِبَادِنَا الْمُؤْمِنِينَ ﴿١٣٢﴾

१३३) र निःसंदेह "लूत(अ.)" पनि पैगम्बरहरू मध्येबाट थिए,

وَإِنَّ لُوطًا لَمِنَ الْمُرْسَلِينَ ﴿١٣٣﴾

१३४) हामीले उनलाई र उनका घरवालाहरू सबैलाई मुक्ति प्रदान गऱ्यौं,

إِذْ نَجَّيْنَاهُ وَأَهْلَهُ أَجْمَعِينَ ﴿١٣٤﴾

१३५) तर एउटा वृद्धा बाहेक जो पछि पर्ने वालामध्येकी थिई ।

إِلَّا عَجُوزًا فِي الْغَابِرِينَ ﴿١٣٥﴾

१३६) अनि हामीले अरुहरूलाई नष्ट पारिदियौं ।

ثُمَّ دَمَّرْنَا الْآخَرِينَ ﴿١٣٦﴾

१३७) र तिमी त बिहान भएपछि उनीहरूका बस्तीहरूको नजीकबाट हिड्छौ,

وَإِنَّكُمْ لَتَمُرُّونَ عَلَيْهِمْ مُصْبِحِينَ ﴿١٣٧﴾

१३८) र रातीमा पनि, त के तिमी (मक्कावाला) तैपनि बुझ्दैनौ ?

وَبِاللَّيْلِ ۚ أَفَلَا تَعْقِلُونَ ﴿١٣٨﴾

१३९) र निःसंदेह "यूनुस(अ.)" पनि पैगम्बर मध्येका थिए,

وَإِنَّ يُونُسَ لَمِنَ الْمُرْسَلِينَ ﴿١٣٩﴾

إِذْ أَبَقَ إِلَى الْفُلْكِ الْمَشْحُونِ ﴿١٤٠﴾

१४०) जब भागेर भरिएको डुङ्गामा आइपुगे ।

فَسَاهَمَ فَكَانَ مِنَ الْمُدْحَضِينَ ﴿١٤١﴾

१४१) अनि त्यसबेला गोला हाल्दा उनको नाम पऱ्यो ।

فَالْتَقَمَهُ الْحُوتُ وَهُوَ مُلِيمٌ ﴿١٤٢﴾

१४२) अनि माछाले उनलाई निलिहाल्यो र उनी आफूलाई धिक्कार्न थालेका थिए ।

فَلَوْلَا أَنَّهُ كَانَ مِنَ الْمُسَبِّحِينَ ﴿١٤٣﴾

१४३) अतः यदि उनले (अल्लाहको) पवित्रताको गुणगान् नगरेको भए,

لَلَبِثَ فِي بَطْنِهِ إِلَىٰ يَوْمِ يُبْعَثُونَ ﴿١٤٤﴾

१४४) त त्यस दिनसम्म जबकि मानिसहरू पुनः जीवित गरिनेछन्, उसैको पेटमा रहन्थे ।

فَنَبَذْنَاهُ بِالْعَرَاءِ وَهُوَ سَقِيمٌ ﴿١٤٥﴾

१४५) अन्ततः हामीले उनलाई जब कि उनी बिरामी थिए, खुल्ला मैदानमा हालिदियौं ।

وَأَنْبَتْنَا عَلَيْهِ شَجَرَةً مِنْ يَقْطِينٍ ﴿١٤٦﴾

१४६) र उनीमाथि हामीले छायाँ गर्ने एउटा बोट उमाऱ्यौं ।

وَأَرْسَلْنَاهُ إِلَىٰ مِائَةِ أَلْفٍ أَوْ يَزِيدُونَ ﴿١٤٧﴾

१४७) र हामीले उनलाई एक लाख वा त्यसभन्दा पनि धेरै मानिसहरूतिर (पैगम्बर बनाएर) पठायौं ।

فَآمَنُوا فَمَتَّعْنَاهُمْ إِلَىٰ حِينٍ ﴿١٤٨﴾

१४८) अनि उनीहरूले ईमान ल्याए र हामीले उनीहरूलाई एक अवधिसम्म सुख भोग्ने अवसर प्रदान गऱ्यौं ।

فَاسْتَفْتِهِمْ أَلِرَبِّكَ الْبَنَاتُ وَلَهُمُ الْبَنُونَ ﴿١٤٩﴾

१४९) उनीहरूसित सोधः "के तिम्रो पालनकर्ताका छोरीहरू र यिनीहरूका छोराहरू छन् ?

أَمْ خَلَقْنَا الْمَلَائِكَةَ إِنَاثًا وَهُمْ شَاهِدُونَ ﴿١٥٠﴾

१५०) वा हामीले फरिश्ताहरूलाई स्त्री बनाउँदा उनीहरू (त्यसबेला) उपस्थित थिए ?"

| | |
|---|---|
| १५१) सावधान रह,! यिनीहरू आफूले झूठा रचेको (कुरा) मात्र भन्दछन् । | أَلَآ إِنَّهُم مِّنْ إِفْكِهِمْ لَيَقُولُونَ ﴿١٥١﴾ |
| १५२) कि "अल्लाहका सन्तान छन् ।" निःसन्देह यिनीहरू एकदम झूठा हुन् । | وَلَدَ اللَّهُ وَإِنَّهُمْ لَكَٰذِبُونَ ﴿١٥٢﴾ |
| १५३) के अल्लाहले आफ्नो लागि छोराहरूको दाँजोमा छोरीहरूलाई रुचाएको छ ? | أَصْطَفَى الْبَنَاتِ عَلَى الْبَنِينَ ﴿١٥٣﴾ |
| १५४) तिमीलाई के भएको छ । कस्तो न्याय गर्दछौ ? | مَا لَكُمْ كَيْفَ تَحْكُمُونَ ﴿١٥٤﴾ |
| १५५) के तिमीले यति पनि बुझ्दैनौ ? | أَفَلَا تَذَكَّرُونَ ﴿١٥٥﴾ |
| १५६) वा तिम्रो पासमा उसको कुनै प्रमाण छ ? | أَمْ لَكُمْ سُلْطَٰنٌ مُّبِينٌ ﴿١٥٦﴾ |
| १५७) यदि तिमी साँचो हौ भने, त आफ्नो किताब प्रस्तुत गर । | فَأْتُوا بِكِتَٰبِكُمْ إِن كُنتُمْ صَٰدِقِينَ ﴿١٥٧﴾ |
| १५८) र उनीहरूले त अल्लाह र जिन्नहरूको बीचमा पनि नाता स्थापित गरेका छन्, हुन त जिन्नहरूलाई राम्ररी थाहा छ कि यस्तो कुरामा विश्वास गर्नेहरू अवश्य समातिएर (यातनामा) उपस्थित गराइनेछन् । | وَجَعَلُوا بَيْنَهُ وَبَيْنَ الْجِنَّةِ نَسَبًا ۚ وَلَقَدْ عَلِمَتِ الْجِنَّةُ إِنَّهُمْ لَمُحْضَرُونَ ﴿١٥٨﴾ |
| १५९) उनीहरूले जेजति अल्लाहको बारेमा वर्णन गर्छन, अल्लाह त्यसबाट पूर्ण रूपले पवित्र र उच्च छ । | سُبْحَٰنَ اللَّهِ عَمَّا يَصِفُونَ ﴿١٥٩﴾ |
| १६०) तर अल्लाहले विशिष्ट सेवकहरूलाई (यातनामा पार्ने छैन), | إِلَّا عِبَادَ اللَّهِ الْمُخْلَصِينَ ﴿١٦٠﴾ |
| १६१) विश्वास गर तिमी र जसलाई तिमी पूज्दछौ, | فَإِنَّكُمْ وَمَا تَعْبُدُونَ ﴿١٦١﴾ |

مَآ أَنتُمْ عَلَيْهِ بِفَٰتِنِينَ ﴿١٦٢﴾

१६२) (अल्लाहको विरोधमा) कसैलाई विचलित गराउन सक्दैनन् ।

إِلَّا مَنْ هُوَ صَالِ ٱلْجَحِيمِ ﴿١٦٣﴾

१६३) तिनीहरू बाहेक जो नर्कमा जानेवाला (नरकी) छन् ।

وَمَا مِنَّآ إِلَّا لَهُۥ مَقَامٌ مَّعْلُومٌ ﴿١٦٤﴾

१६४) र (फरिश्ताहरू भन्दछन् कि) हामी मध्ये प्रत्येकको एक स्थान निश्चित छ ।

وَإِنَّا لَنَحْنُ ٱلصَّآفُّونَ ﴿١٦٥﴾

१६५) र हामी त (स्वर्गदूत) अल्लाहको भक्तिमा आफ्नो स्थानमा पंक्तिवद्ध छौं ।

وَإِنَّا لَنَحْنُ ٱلْمُسَبِّحُونَ ﴿١٦٦﴾

१६६) र अल्लाहको महानता र श्रेष्ठता बयान गर्दछौं ।

وَإِن كَانُوا۟ لَيَقُولُونَ ﴿١٦٧﴾

१६७) काफिरहरूले भन्ने गर्दथे,

لَوْ أَنَّ عِندَنَا ذِكْرًا مِّنَ ٱلْأَوَّلِينَ ﴿١٦٨﴾

१६८) कि "यदि हाम्रो समक्ष पहिलेका मानिसहरूको वर्णन भएको भए,

لَكُنَّا عِبَادَ ٱللَّهِ ٱلْمُخْلَصِينَ ﴿١٦٩﴾

१६९) त हामी पनि अल्लाहका विशिष्ट सेवक हुनेथ्यौं ।"

فَكَفَرُوا۟ بِهِۦ فَسَوْفَ يَعْلَمُونَ ﴿١٧٠﴾

१७०) तर फेरि यस कुरआनसँग कुफ्र गर्न पुगे, तसर्थ अब शीघ्र नै उनीहरूलाई (परिणाम) थाहा भइहाल्नेछ ।

وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا ٱلْمُرْسَلِينَ ﴿١٧١﴾

१७१) र हाम्रो (सन्देश पुऱ्याउने) रसूल-हरूसित हाम्रो वायदा (वचन) पहिला नै भइसकेको छ,

إِنَّهُمْ لَهُمُ ٱلْمَنصُورُونَ ﴿١٧٢﴾

१७२) कि निश्चय नै उनीहरूको सहायता गरिनेछ ।

وَإِنَّ جُندَنَا لَهُمُ ٱلْغَٰلِبُونَ ﴿١٧٣﴾

१७३) र निश्चय नै हाम्रो सेना नै प्रभावि रहनेछन्,

१७४) अतः एक अवधिसम्म तपाईं उनीहरूसित विमुख रहनु,

فَتَوَلَّ عَنْهُمْ حَتّٰى حِيْنٍ ﴿١٧٤﴾

१७५) र उनीहरूलाई हेरिराख्नुस् । र यिनीहरूले पनि शीघ्र नै (कुफ्रको परिणाम) देखिहाल्नेछन् ।

وَّاَبْصِرْهُمْ فَسَوْفَ يُبْصِرُوْنَ ﴿١٧٥﴾

१७६) के उनीहरू हाम्रो यातनाको निम्ति हतार गरिराखेका छन् ।

اَفَبِعَذَابِنَا يَسْتَعْجِلُوْنَ ﴿١٧٦﴾

१७७) तर जब हाम्रो यातना उनीहरूको आँगनमा उत्रन्छ तब जसलाई भय सुनाइएको थियो, उनीहरूको निम्ति नराम्रो दिन हुनेछ ।

فَاِذَا نَزَلَ بِسَاحَتِهِمْ فَسَآءَ صَبَاحُ الْمُنْذَرِيْنَ ﴿١٧٧﴾

१७८) एक अवधिसम्म तपाईंले उनीहरूको विचार छोडी दिनुस् ।

وَتَوَلَّ عَنْهُمْ حَتّٰى حِيْنٍ ﴿١٧٨﴾

१७९) र हेर्दै गर्नुस्, यिनीहरूले पनि शीघ्र नै (परिणाम) देखिहाल्नेछन् ।

وَّاَبْصِرْ فَسَوْفَ يُبْصِرُوْنَ ﴿١٧٩﴾

१८०) पवित्र छ तपाईंको पालनकर्ता जो धेरै सम्मानित र मुक्त छ ती कुराहरूबाट जुन यिनीहरूले वर्णन गर्दछन् ।

سُبْحٰنَ رَبِّكَ رَبِّ الْعِزَّةِ عَمَّا يَصِفُوْنَ ﴿١٨٠﴾

१८१) पैगम्बरहरू माथि सलाम छ ।

وَسَلٰمٌ عَلَى الْمُرْسَلِيْنَ ﴿١٨١﴾

१८२) र सम्पूर्ण प्रशंसा अल्लाहको लागि छ जो सम्पूर्ण जगतको पालनकर्ता हो ।

وَالْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿١٨٢﴾



# सूरतु साद-३८




सूरतु साद मक्की हो यसमा ८८ आयतहरू र ५ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِیْمِ

१) साद, कसम छ, त्यस कुरआनको, जुन उपदेश दिनेवाला छ ।

صٓ وَالْقُرْاٰنِ ذِی الذِّکْرِ ۟ۚ

२) तर जो काफिर छन्, उनीहरू घमण्ड र विरोधमा छन् ।

بَلِ الَّذِیْنَ کَفَرُوْا فِیْ عِزَّةٍ وَّشِقَاقٍ ۟

३) हामीले उनीहरूभन्दा पहिला धेरै समूहलाई नष्ट गऱ्यौं, तब उनीहरूले धेरै कराए तर त्यो छुटकाराको समय थिएन ।

کَمْ اَهْلَکْنَا مِنْ قَبْلِهِمْ مِّنْ قَرْنٍ فَنَادَوْا وَّلَاتَ حِیْنَ مَنَاصٍ ۟

४) र उनीहरूले आश्चर्य गरे कि उनीहरूको पासमा उनीहरू मध्येबाट एउटा सचेतकर्ता आयो र (इन्कार गर्नेहरूले) भन्न थाले: कि "यो त जादूगर र झूठा हो ।"

وَعَجِبُوْۤا اَنْ جَآءَهُمْ مُّنْذِرٌ مِّنْهُمْ ؗ وَقَالَ الْکٰفِرُوْنَ هٰذَا سٰحِرٌ کَذَّابٌ ۟ۖۚ

५) के उसले यति धेरै पूज्य उपास्यहरूलाई एक्लो एउटै उपास्य बनाइदियो ? यो त ठूलै आश्चर्यजनक कुरा हो ।

اَجَعَلَ الْاٰلِهَةَ اِلٰهًا وَّاحِدًا ۖۚ اِنَّ هٰذَا لَشَیْءٌ عُجَابٌ ۟

६) उनका नायकहरूले यो भन्दै हिंडिहाले कि "हिंड र आफ्ना उपास्यहरू (को पूजा) मा डटी रह । निःसन्देह यस कुरामा कुनै स्वार्थ (नीहित) छ ।

وَانْطَلَقَ الْمَلَاُ مِنْهُمْ اَنِ امْشُوْا وَاصْبِرُوْا عَلٰۤی اٰلِهَتِکُمْ ۖۚ اِنَّ هٰذَا لَشَیْءٌ یُّرَادُ ۟

| | |
|---|---|
| ७) यो कुरा त अघिका धर्ममा पनि हामीले कहिल्यै सुनेनौं । यो बिलकुलै मनगढन्ते कुरा हो । | مَا سَمِعْنَا بِهَٰذَا فِي الْمِلَّةِ الْآخِرَةِ إِنْ هَٰذَا إِلَّا اخْتِلَاقٌ ⑦ |
| ८) के हामी सबै मध्येबाट यसैमाथि अल्लाहको आदेश अवतरित भएको हो ? वास्तवमा उनीहरू मेरो वह्यको विषयमा सन्देहमा छन् ?" बरु (सत्य यो हो कि) उनीहरूले अझैसम्म मेरो यातनाको स्वाद चाखेका छैनन् ?" | أَأُنْزِلَ عَلَيْهِ الذِّكْرُ مِنْ بَيْنِنَا ۚ بَلْ هُمْ فِي شَكٍّ مِنْ ذِكْرِي ۖ بَلْ لَمَّا يَذُوقُوا عَذَابِ ⑧ |
| ९) वा के उनीहरूको पासमा तिम्रो दिनेवाला महान् पालनकर्ताको दयाका खजानाहरू छन ? | أَمْ عِنْدَهُمْ خَزَائِنُ رَحْمَةِ رَبِّكَ الْعَزِيزِ الْوَهَّابِ ⑨ |
| १०) वा के आकाशहरू र जमीन र जेजति उनीहरूको बीचमा छन् ती, (सबै) माथि उनैको आधिपत्य छ, त्यस्तो हो भने यिनीहरू डोरी तानेर चढिहालुन् । | أَمْ لَهُمْ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا ۖ فَلْيَرْتَقُوا فِي الْأَسْبَابِ ⑩ |
| ११) पराजित समूहहरू मध्ये यो पनि एउटा (समूहको) सेना हो । | جُنْدٌ مَا هُنَالِكَ مَهْزُومٌ مِنَ الْأَحْزَابِ ⑪ |
| १२) यी भन्दा अगाडि पनि "नूहको" कौम र "आद" र मेखवाला (किल्लावाला) फिरऔनले झूठा भनिसकेका थिए । | كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ وَعَادٌ وَفِرْعَوْنُ ذُو الْأَوْتَادِ ⑫ |
| १३) र समूद र "लूतका" कौम (जातिबन्धु) र बनका बासिन्दा पनि यी नै ती समूह हुन् । | وَثَمُودُ وَقَوْمُ لُوطٍ وَأَصْحَابُ الْأَيْكَةِ ۚ أُولَٰئِكَ الْأَحْزَابُ ⑬ |
| १४) तिनीहरू प्रत्येकले रसूलहरूलाई | إِنْ كُلٌّ إِلَّا كَذَّبَ الرُّسُلَ فَحَقَّ عِقَابِ ⑭ |

आरोप लगाए तसर्थ मेरो सजाय उनीमाथि निश्चित भयो ।

وَمَا يَنظُرُ هَٰٓؤُلَآءِ إِلَّا صَيْحَةً وَٰحِدَةً مَّا لَهَا مِن فَوَاقٍ ﴿١٥﴾

१५) यिनीहरू त मात्र एउटा चित्कारको प्रतिक्षामा छन् जसबाट अलिकति पनि अवकाश हुनेछैन ।

وَقَالُوا۟ رَبَّنَا عَجِّل لَّنَا قِطَّنَا قَبْلَ يَوْمِ ٱلْحِسَابِ ﴿١٦﴾

१६) र उनी भन्छन्: कि "हे हाम्रो पालनकर्ता ! हामीलाई हाम्रो भाग हिसाबको दिनभन्दा अगावै दिइहाल ।

ٱصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَٱذْكُرْ عَبْدَنَا دَاوُۥدَ ذَا ٱلْأَيْدِ ۖ إِنَّهُۥٓ أَوَّابٌ ﴿١٧﴾

१७) (हे पैगम्बर !) यिनीहरू जे भन्दछन्, त्यसमाथि धैर्य गर्नुस् र हाम्रो सेवक "दाऊद (अ.)लाई" स्मरण गर्नुस् जो शक्तिशाली थिए । (र) निश्चय नै उनी (अल्लाहतिर) प्रवृत्त थिए ।

إِنَّا سَخَّرْنَا ٱلْجِبَالَ مَعَهُۥ يُسَبِّحْنَ بِٱلْعَشِىِّ وَٱلْإِشْرَاقِ ﴿١٨﴾

१८) हामीले पर्वतहरूलाई उनको आदेशको अधीन गरिदिएका थियौं कि प्रात:काल र सन्ध्या समय उनको साथमा गुणगान गरिराखुन् ।

وَٱلطَّيْرَ مَحْشُورَةً ۖ كُلٌّ لَّهُۥٓ أَوَّابٌ ﴿١٩﴾

१९) र पंक्षीहरूलाई पनि जो एकत्र हुन्थे । सबै उनका आज्ञाकारी थिए ।

وَشَدَدْنَا مُلْكَهُۥ وَءَاتَيْنَٰهُ ٱلْحِكْمَةَ وَفَصْلَ ٱلْخِطَابِ ﴿٢٠﴾

२०) र हामीले उनको राज्यलाई सुदृढ गरिदिएका थियौं र उनलाई तत्वदर्शीता प्रदान गरेका थियौं र निर्णायक कुरा भन्ने क्षमता प्रदान गरेका थियौं ।

وَهَلْ أَتَىٰكَ نَبَؤُا۟ ٱلْخَصْمِ إِذْ تَسَوَّرُوا۟ ٱلْمِحْرَابَ ﴿٢١﴾

२१) र के तिमीलाई विवाद गर्नेहरूको समाचार पनि पुगेको छ ? जब उनीहरू पर्खाल चढी एकान्त कक्षमा आइपुगे ।

إِذْ دَخَلُوا عَلَىٰ دَاوُۥدَ فَفَزِعَ مِنْهُمْ ۖ قَالُوا لَا تَخَفْ ۖ
خَصْمَانِ بَغَىٰ بَعْضُنَا عَلَىٰ بَعْضٍ فَاحْكُمْ بَيْنَنَا
بِالْحَقِّ وَلَا تُشْطِطْ وَاهْدِنَا إِلَىٰ سَوَاءِ الصِّرَاطِ ﴿٢٢﴾

२२) जुन बेला उनीहरू “दाऊद (अ.)को” पासमा आए, त्यतिखेर उनी उनीहरूसित तर्सिहाले । उनीहरूले भने कि भय नगर । हामी दुवैको एउटा मुद्दा छ कि, हामी मध्ये एउटाले अर्कोसित अन्याय गरेको छ, तसर्थ तपाईंले हाम्रो बीचमा ठीक-ठीक निर्णय गरिदिनुस् । र अन्याय नगर्नुहोला र हामीलाई सोझो बाटो देखाइदिनुस् ।

إِنَّ هَٰذَا أَخِي لَهُ تِسْعٌ وَتِسْعُونَ نَعْجَةً وَلِيَ نَعْجَةٌ
وَاحِدَةٌ فَقَالَ أَكْفِلْنِيهَا وَعَزَّنِي فِي الْخِطَابِ ﴿٢٣﴾

२३) (कुरा यो छ कि) यो मेरो भाइ हो । यसका उनान्सय भेंडीहरू छिन् र मेरो पासमा एउटा दुम्बी मात्र छे । यसले भन्छ कि, यसलाई पनि मलाई सुम्पिदे, र कुरामा म माथि जबरजस्ती गर्दछ ।

قَالَ لَقَدْ ظَلَمَكَ بِسُؤَالِ نَعْجَتِكَ إِلَىٰ نِعَاجِهِ ۖ وَإِنَّ
كَثِيرًا مِنَ الْخُلَطَاءِ لَيَبْغِي بَعْضُهُمْ عَلَىٰ بَعْضٍ إِلَّا
الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَقَلِيلٌ مَا هُمْ ۗ
وَظَنَّ دَاوُۥدُ أَنَّمَا فَتَنَّاهُ فَاسْتَغْفَرَ رَبَّهُ وَخَرَّ رَاكِعًا
وَأَنَابَ ۩ ﴿٢٤﴾

२४) उनले भनेः के “यसले तिम्रो दुम्बी लाई आफ्नो दुम्बीहरूमा मिसाइने कुरा गरेर, निःसन्देह तिमीमाथि अन्याय गर्दछ । अधिकतर साझेदारहरू एक अर्कामाथि ज्यादति नै गर्ने गर्दछन् । हो, जसले ईमान ल्याए र असल कर्म गरे, तिनीहरू बाहेक, र यस्ता निकै कम छन् ।” र “दाऊद (अ.)ले” ठाने कि (यस घटनाबाट) हामीले उनको परीक्षा गरेका हौं तब उनले आफ्नो पालनकर्तासित क्षमा याचना गरे र पश्चाताप गर्दै सजदा गरे र अल्लाहतिर प्रवृत्त भए ।

فَغَفَرْنَا لَهُ ذَٰلِكَ ۖ وَإِنَّ لَهُ عِندَنَا لَزُلْفَىٰ وَحُسْنَ مَآبٍ ﴿٢٥﴾

२५) तब हामीले पनि उनलाई क्षमा गर्‍यौं र निश्चय नै उनी हाम्रो नजीकका र उत्तम स्थान वाला हुन् ।

يَٰدَاوُۥدُ إِنَّا جَعَلْنَٰكَ خَلِيفَةً فِى ٱلْأَرْضِ فَٱحْكُم بَيْنَ ٱلنَّاسِ بِٱلْحَقِّ وَلَا تَتَّبِعِ ٱلْهَوَىٰ فَيُضِلَّكَ عَن سَبِيلِ ٱللَّهِ ۚ إِنَّ ٱلَّذِينَ يَضِلُّونَ عَن سَبِيلِ ٱللَّهِ لَهُمْ عَذَابٌ شَدِيدٌۢ بِمَا نَسُوا۟ يَوْمَ ٱلْحِسَابِ ﴿٢٦﴾

२६) हे दाऊद ! "हामीले धरतीमा तिमीलाई उत्तराधिकारी बनाएका छौं । अतः तिमीले मानिसहरूको बीचमा सत्यताका साथ फैसला गर्नु र आफ्नो व्यक्तिगत इच्छाको अनुपालन नगर्नु कि त्यसले तिमीलाई अल्लाहको मार्गबाट विचलित गराइदिनेछ, जुन मानिसहरू अल्लाहको मार्गबाट विचलित हुन्छन्, निश्चय नै उनीहरूको निम्ति कठोर यातना छ, किनभने उनीहरूले हिसाबको दिनलाई बिर्सिदिए ।

وَمَا خَلَقْنَا ٱلسَّمَآءَ وَٱلْأَرْضَ وَمَا بَيْنَهُمَا بَٰطِلًا ۚ ذَٰلِكَ ظَنُّ ٱلَّذِينَ كَفَرُوا۟ ۚ فَوَيْلٌ لِّلَّذِينَ كَفَرُوا۟ مِنَ ٱلنَّارِ ﴿٢٧﴾

२७) र हामीले आकाश र धरतीलाई र जे-जति उनीहरूको बीचमा छ, व्यर्थमा सृष्टि गरेका होइनौं । यो उनीहरूको सोचाई हो जो काफिर छन् । तसर्थ काफिरहरूको लागि नर्कको यातना छ ।

أَمْ نَجْعَلُ ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ كَٱلْمُفْسِدِينَ فِى ٱلْأَرْضِ أَمْ نَجْعَلُ ٱلْمُتَّقِينَ كَٱلْفُجَّارِ ﴿٢٨﴾

२८) जुन मानिसहरूले ईमान ल्याए र असल कर्म गरिराखे, के उनीहरूलाई हामीले तिनीहरू सरह गरिदिन्छौं जसले धरतीमा उपद्रव गर्दछन्, वा फेरि संयमीहरूलाई दुराचारीहरू जस्तो गरिदियौं ?

كِتَٰبٌ أَنزَلْنَٰهُ إِلَيْكَ مُبَٰرَكٌ لِّيَدَّبَّرُوٓا۟ ءَايَٰتِهِۦ وَلِيَتَذَكَّرَ أُو۟لُوا۟ ٱلْأَلْبَٰبِ ﴿٢٩﴾

२९) (यो) धेरै अनुग्रहयुक्त किताब हो, जुन हामीले तपाईंमाथि अवतरित

गरेका छौं । ताकि मानिसहरूले यसका आयतहरूमा सोचविचार गरुन् र बुद्धिवालाहरूले यसबाट शिक्षा ग्रहण गरुन् ।

ووهبنا لداود سليمن نعم العبد انه اواب ﴿٣٠﴾

३०) र हामीले "दाऊदलाई" "सुलैमान" नामको छोरा प्रदान गर्‍यौं । उनी धेरै राम्रो बन्दा (भक्त) थिए । निश्चय नै उनी अल्लाहतिर प्रवृत्त हुनेवाला थिए ।

اذ عرض عليه بالعشي الصفنت الجياد ﴿٣١﴾

३१) (स्मरण गर) जब सन्ध्याको समयमा उनका अगाडि राम्रा द्रुतगामी घोडाहरू उपस्थित गराइए ।

فقال اني احببت حب الخير عن ذكر ربي حتى توارت بالحجاب ﴿٣٢﴾

३२) तब भन्न थाले कि: "मैले पालनकर्ताको स्मरणबाट (बेवास्ता भई) यी घोडाहरूसँगको मायालाई राम्रो ठानें ।" यहाँसम्म कि सूर्य अस्त भइसक्यो ।

ردوها علي فطفق مسحا بالسوق والاعناق ﴿٣٣﴾

३३) (भने कि) "उनीहरूलाई मेरो नजीकमा ल्याऊ ।" अनि उनीहरूको गोडा र गर्दनमा हातले मुसार्न थाले ।

ولقد فتنا سليمن والقينا على كرسيه جسدا ثم اناب ﴿٣٤﴾

३४) र हामीले सुलैमान(अ.)को परीक्षा गर्‍यौं । र उनको सिंहासनमा एउटा शरीर राखिदियौं । अनि उनी अल्लाहतिर प्रवृत्त भए ।

قال رب اغفر لي وهب لي ملكا لا ينبغي لاحد من بعدي انك انت الوهاب ﴿٣٥﴾

३५) उनले भने: "हे मेरो पालनकर्ता ! मलाई क्षमा गरिदेऊ, र मलाई त्यो राज्य प्रदान गर, जुन म बाहेक

कसैको लागि उपयुक्त नहोस् । निश्चय नै तिमी ठूलो दाता हौ ।''

فَسَخَّرْنَا لَهُ الرِّيحَ تَجْرِي بِأَمْرِهِ رُخَاءً حَيْثُ أَصَابَ ﴿٣٦﴾

३६) तब हामीले वायुलाई उनको अधीनमा गरिदियौं जुन उनको आदेशानुसार, जहाँ उनी पुग्न चाहन्थे, सरलतापूर्वक पुऱ्याइदिन्थ्यो ।

وَالشَّيَاطِينَ كُلَّ بَنَّاءٍ وَغَوَّاصٍ ﴿٣٧﴾

३७) र शक्तिशाली जिन्नहरूलाई पनि उनको अधीन गरिदियौं, सबै भवन बनाउनेवाला र गोताखोर (डुबक्की लगाउनेवाला) लाई ।

وَآخَرِينَ مُقَرَّنِينَ فِي الْأَصْفَادِ ﴿٣٨﴾

३८) र अरु जिन्नहरूलाई पनि जो जंजीरमा जकडिएका थिए ।

هَٰذَا عَطَاؤُنَا فَامْنُنْ أَوْ أَمْسِكْ بِغَيْرِ حِسَابٍ ﴿٣٩﴾

३९) (हामीले भन्यौं) ''यो हाम्रो बक्सीश हो, अब तिमी भलाई गर वा रोकी राख (तिमीसित) कुनै हिसाब हुने छैन ।''

وَإِنَّ لَهُ عِنْدَنَا لَزُلْفَىٰ وَحُسْنَ مَآبٍ ﴿٤٠﴾

४०) र उनको निम्ति हामीकहाँ धेरै सामीप्यता र उत्तम स्थान छ ।

وَاذْكُرْ عَبْدَنَا أَيُّوبَ إِذْ نَادَىٰ رَبَّهُ أَنِّي مَسَّنِيَ الشَّيْطَانُ بِنُصْبٍ وَعَذَابٍ ﴿٤١﴾

४१) र हाम्रा भक्त ''अय्यूब(अ.)लाई'' पनि स्मरण गर, जब उसले आफ्नो पालनकर्तालाई पुकाऱ्यो: कि ''शैतानले मलाई दु:ख र पीडा पुऱ्याएको छ ।''

ارْكُضْ بِرِجْلِكَ ۖ هَٰذَا مُغْتَسَلٌ بَارِدٌ وَشَرَابٌ ﴿٤٢﴾

४२) (हामीले भन्यौं कि धरतीमाथि) आफ्नो लातले हान, (हेर), यो (मूल), नुहाउनको निम्ति चिसो र पिउनको निम्ति (मिठो) पानी हो ।''

٤٣) र हामीले उनका पूरै जहान परिवार र उनका साथ अरुलाई पनि उनलाई प्रदान गर्‍यौं । (यो) हाम्रो तर्फबाट दयालुता र बुद्धिवालाहरूको निम्ति शिक्षाको रूपमा थियो ।

وَوَهَبْنَا لَهُۥٓ أَهْلَهُۥ وَمِثْلَهُم مَّعَهُمْ رَحْمَةً مِّنَّا وَذِكْرَىٰ لِأُو۟لِى ٱلْأَلْبَٰبِ ﴿٤٣﴾

४४) र आफ्नो हातमा झाडू (केही झारपात) लिएर त्यसबाट हिर्काऊ र शपथ नतोड ।" साँचो यो हो कि हामीले उनलाई ठूलो धैर्यवान् भक्त पायौं, उनी धेरै राम्रो उपासक थिए । र उनी धेरै ध्यान राख्नेवाला थिए ।

وَخُذْ بِيَدِكَ ضِغْثًا فَٱضْرِب بِّهِۦ وَلَا تَحْنَثْ ۗ إِنَّا وَجَدْنَٰهُ صَابِرًا ۚ نِّعْمَ ٱلْعَبْدُ ۖ إِنَّهُۥٓ أَوَّابٌ ﴿٤٤﴾

४५) हाम्रा उपासकहरू "इब्राहीम", "इस्हाक" र "यअ्कूब(अ.)लाई" स्मरण गर जो शक्तिवाला र दृष्टिवाला थिए ।

وَٱذْكُرْ عِبَٰدَنَآ إِبْرَٰهِيمَ وَإِسْحَٰقَ وَيَعْقُوبَ أُو۟لِى ٱلْأَيْدِى وَٱلْأَبْصَٰرِ ﴿٤٥﴾

४६) उनीहरूलाई हामीले आखिरतको विशिष्ट कुराको साथ सम्बन्धित गरिदिएका थियौं ।

إِنَّآ أَخْلَصْنَٰهُم بِخَالِصَةٍ ذِكْرَى ٱلدَّارِ ﴿٤٦﴾

४७) यी सबै हाम्रा नजीक रोजिएका र असल मानिसहरूमध्येका थिए ।

وَإِنَّهُمْ عِندَنَا لَمِنَ ٱلْمُصْطَفَيْنَ ٱلْأَخْيَارِ ﴿٤٧﴾

४८) इस्माईल र "यसअ" र "जुलकिफ्ल(अ.) लाई" पनि स्मरण गर । उनीहरू सबै असल मानिसहरू मध्येका थिए ।

وَٱذْكُرْ إِسْمَٰعِيلَ وَٱلْيَسَعَ وَذَا ٱلْكِفْلِ ۖ وَكُلٌّ مِّنَ ٱلْأَخْيَارِ ﴿٤٨﴾

४९) यो उपदेश हो र विश्वास गर कि संयमीहरूको निम्ति राम्रो ठाउँ छ,

هَٰذَا ذِكْرٌ ۚ وَإِنَّ لِلْمُتَّقِينَ لَحُسْنَ مَـَٔابٍ ﴿٤٩﴾

५०) अर्थात (सधैं बासको निम्ति) जन्नतहरू छन्, जसका द्वार उनीहरूको निम्ति खुल्ला रहनेछन् ।

جَنَّٰتِ عَدْنٍ مُّفَتَّحَةً لَّهُمُ ٱلْأَبْوَٰبُ ﴿٥٠﴾

مُتَّكِـِٔينَ فِيهَا يَدْعُونَ فِيهَا بِفَاكِهَةٍ كَثِيرَةٍ وَشَرَابٍ ﴿٥١﴾

५१) त्यसमा उनीहरू आरामका साथ तकियामा टेक लगाएर बसेका हुन्छन् र थुप्रै फलफूल र थरि-थरिका पेय पदार्थको आदेश गरिरहनेछन् ।

وَعِندَهُمْ قَاصِرَاتُ الطَّرْفِ أَتْرَابٌ ﴿٥٢﴾

५२) र उनीहरूको पासमा दृष्टि तल झुकाइराख्ने समान उमेरवाली स्त्रीहरू हुनेछिन्,

هَٰذَا مَا تُوعَدُونَ لِيَوْمِ الْحِسَابِ ﴿٥٣﴾

५३) यी ती कुराहरू हुन् जसको वचन हिसाबको दिनको निम्ति, तिमीसित गरिएको थियो ।

إِنَّ هَٰذَا لَرِزْقُنَا مَا لَهُ مِن نَّفَادٍ ﴿٥٤﴾

५४) यो हामीले प्रदान गरेको रोजी हो जुन कहिल्यै समाप्त हुने छैन ।

هَٰذَا ۚ وَإِنَّ لِلطَّاغِينَ لَشَرَّ مَآبٍ ﴿٥٥﴾

५५) यी (उपहारहरू त आज्ञाकारीहरूका निम्ति) प्रतिफल हुन् र उल्लंघनकारीहरूको निम्ति नराम्रो स्थान छ ।

جَهَنَّمَ يَصْلَوْنَهَا فَبِئْسَ الْمِهَادُ ﴿٥٦﴾

५६) (अर्थात) नर्कछ, जसमा उनीहरू प्रवेश गर्नेछन् र त्यो एकदम नराम्रो विश्राम स्थल हो ।

هَٰذَا فَلْيَذُوقُوهُ حَمِيمٌ وَغَسَّاقٌ ﴿٥٧﴾

५७) यो उम्लिराखेको तातो पानी र पीप (हो), अब त्यसको स्वाद चाखुन् ।

وَآخَرُ مِن شَكْلِهِ أَزْوَاجٌ ﴿٥٨﴾

५८) र यस्तै प्रकारका अन्य धेरै यातना (हुनेछन्) ।

هَٰذَا فَوْجٌ مُّقْتَحِمٌ مَّعَكُمْ ۖ لَا مَرْحَبًا بِهِمْ ۚ إِنَّهُمْ صَالُو النَّارِ ﴿٥٩﴾

५९) "यो एउटा समूह हो जुन तिम्रो साथ(आगो)मा प्रवेश गर्नेछ । कुनै आवभगत उनीहरूको निम्ति हुनेछैन, उनीहरू त नर्कमा जानेवाला हुन्,

| | |
|---|---|
| ६०) उनीहरूले भन्ने छन्: "होइन, बरु तिमीलाई नै कुनै स्वागत हुनेछैन् । तिमीले नै त यो (विपना) हाम्रो सामु ल्याएका थियौ । यो बस्नको लागि नराम्रो ठाउँ हो ।" | قَالُوا بَلْ أَنتُمْ لَا مَرْحَبًا بِكُمْ ۖ أَنتُمْ قَدَّمْتُمُوهُ لَنَا ۖ فَبِئْسَ الْقَرَارُ ﴿٦٠﴾ |
| ६१) उनीहरूले भन्नेछन्: हे "हाम्रो पालनकर्ता ! जसले (कुफ्रको कुरा) पहिलादेखि हाम्रो लागि ल्याएको छ, उसलाई नर्कमा दोब्बर यातना दिनु ।" | قَالُوا رَبَّنَا مَن قَدَّمَ لَنَا هَٰذَا فَزِدْهُ عَذَابًا ضِعْفًا فِي النَّارِ ﴿٦١﴾ |
| ६२) र नर्कवालाहरू भन्नेछन्: "के कारण छ कि हामीले ती व्यक्तिहरूलाई देख्दैनौं, जसलाई हामीले नराम्रा मध्ये गन्थ्यौं ?" | وَقَالُوا مَا لَنَا لَا نَرَىٰ رِجَالًا كُنَّا نَعُدُّهُم مِّنَ الْأَشْرَارِ ﴿٦٢﴾ |
| ६३) के हामीले नै उनको उपहास गरेका थियौं, वा हाम्रा आँखाहरू उनीहरू तिरबाट हटेका छन् ?" | أَتَّخَذْنَاهُمْ سِخْرِيًّا أَمْ زَاغَتْ عَنْهُمُ الْأَبْصَارُ ﴿٦٣﴾ |
| ६४) निश्चित जान नर्कीहरूको यो आपसमा झगडा त अवश्य हुने छ । | إِنَّ ذَٰلِكَ لَحَقٌّ تَخَاصُمُ أَهْلِ النَّارِ ﴿٦٤﴾ |
| ६५) भनिदिनुस्: कि "म त मात्र सचेत गर्नेवाला हूँ । र एक अल्लाह सर्वशक्तिमान बाहेक अरु कोही सत्य पूज्य छैन् । | قُلْ إِنَّمَا أَنَا مُنذِرٌ ۖ وَمَا مِنْ إِلَٰهٍ إِلَّا اللَّهُ الْوَاحِدُ الْقَهَّارُ ﴿٦٥﴾ |
| ६६) जो पालनकर्ता हो आकाशहरू र धरतीको, र जे ती दुईटैको बीचमा छन्, सबैको मालिक हो, सर्वशक्तिमान र ठूलो क्षमादाता ।" | رَبُّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا الْعَزِيزُ الْغَفَّارُ ﴿٦٦﴾ |

قُلْ هُوَ نَبَؤٌا عَظِيمٌ ﴿٦٧﴾

६७) भनिदिनुस् कि "यो एउटा ठूलो खबर हो,

أَنتُمْ عَنْهُ مُعْرِضُونَ ﴿٦٨﴾

६८) जसबाट तिमीले लापरवाह भइराखेका छौ ।

مَا كَانَ لِيَ مِنْ عِلْمٍ بِالْمَلَإِ الْأَعْلَىٰ إِذْ يَخْتَصِمُونَ ﴿٦٩﴾

६९) मलाई, ती अग्ला फरिश्ताहरूको कुनै ज्ञान थिएन जब उनीहरू विवाद गरिराखेका थिए ।

إِن يُوحَىٰ إِلَيَّ إِلَّا أَنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٧٠﴾

७०) मतिर त त्यो वह्य मात्र गरिन्छ कि म स्पष्ट रूपले सचेत गर्नेवाला हूँ ।"

إِذْ قَالَ رَبُّكَ لِلْمَلَائِكَةِ إِنِّي خَالِقٌ بَشَرًا مِّن طِينٍ ﴿٧١﴾

७१) जब कि तपाईंको पालनकर्ताले फरिश्ताहरूसित भन्यो कि "म माटोले मानिसको सृष्टि गर्नेवाला छु ।

فَإِذَا سَوَّيْتُهُ وَنَفَخْتُ فِيهِ مِن رُّوحِي فَقَعُوا لَهُ سَاجِدِينَ ﴿٧٢﴾

७२) त जब मैले त्यसलाई ठिकठाक गरिहालूँ र त्यसमा आफ्नो रूह (आत्मा) फूँकिसकूँ तब तिमीहरू उसको अगाडि ढोगिहाल्नु ।"

فَسَجَدَ الْمَلَائِكَةُ كُلُّهُمْ أَجْمَعُونَ ﴿٧٣﴾

७३) तब सबै फरिश्ताहरूले ढोगे(सिज्दा गरे) ।

إِلَّا إِبْلِيسَ اسْتَكْبَرَ وَكَانَ مِنَ الْكَافِرِينَ ﴿٧٤﴾

७४) तर शैतान (इबलीस)ले गरेन । उसले घमण्ड गऱ्यो र काफिरहरूमध्येको भइहाल्यो ।

قَالَ يَا إِبْلِيسُ مَا مَنَعَكَ أَن تَسْجُدَ لِمَا خَلَقْتُ بِيَدَيَّ ۖ أَسْتَكْبَرْتَ أَمْ كُنتَ مِنَ الْعَالِينَ ﴿٧٥﴾

७५) अल्लाहले भन्योः कि "हे इब्लीस ! जुन व्यक्तिलाई मैले आफ्ना हातहरूले सृष्टि गरें, त्यसको अगाडि ढोग्नबाट तिमीलाई कुन

कुराले मनाही गऱ्यो, के तिमीले घमण्ड गऱ्यौ, वा तिमी उच्च पदवालाहरू मध्येका हौ ?''

قَالَ اَنَا خَيْرٌ مِّنْهُ ۚ خَلَقْتَنِيْ مِنْ نَّارٍ وَّخَلَقْتَهٗ مِنْ طِيْنٍ ﴿٧٦﴾

७६) उसले जवाफ दियो कि ''म यसभन्दा उत्तम छु (किनकि) तिमीले मलाई आगोबाट बनायौ र यसलाई माटोबाट सृष्टि गऱ्यौ ।''

قَالَ فَاخْرُجْ مِنْهَا فَاِنَّكَ رَجِيْمٌ ﴿٧٧﴾

७७) आदेश भयो तँ ''यहाँबाट गइहाल, तँ तृस्कृत छस् ।

وَّاِنَّ عَلَيْكَ لَعْنَتِيْٓ اِلٰى يَوْمِ الدِّيْنِ ﴿٧٨﴾

७८) र तँमाथि कयामतको दिनसम्म मेरो धिक्कार र तिरस्कार रहनेछ ।''

قَالَ رَبِّ فَاَنْظِرْنِيْٓ اِلٰى يَوْمِ يُبْعَثُوْنَ ﴿٧٩﴾

७९) उसले भन्यो, ''हे मेरो पालनकर्ता ! मलाई त्यस दिनसम्मका लागि समय प्रदान गर जब कि मानिसहरू उठाइनेछन् ।''

قَالَ فَاِنَّكَ مِنَ الْمُنْظَرِيْنَ ﴿٨٠﴾

८०) अल्लाहबाट आदेश भयो: ''तिमीलाई मोहलत दिइयो ।

اِلٰى يَوْمِ الْوَقْتِ الْمَعْلُوْمِ ﴿٨١﴾

८१) त्यसदिनसम्म जसको समय निर्धारित छ ।''

قَالَ فَبِعِزَّتِكَ لَاُغْوِيَنَّهُمْ اَجْمَعِيْنَ ﴿٨٢﴾

८२) भन्न थाल्यो कि त्यसो भए ''मलाई तिम्रो प्रतापको सौगन्ध म उनीहरू सबैलाई विचलित गरिदिनेछु ?''

اِلَّا عِبَادَكَ مِنْهُمُ الْمُخْلَصِيْنَ ﴿٨٣﴾

८३) (तर) ती बाहेक जो कि तिम्रा मनपराइएका र विशिष्ट भक्त छन् ।''

قَالَ فَالْحَقُّ ۡ وَالْحَقَّ اَقُوْلُ ﴿٨٤﴾

८४) आदेश भयो सत्य (छ) र म सत्य नै भन्ने गर्दछु ।

لَاَمۡلَـَٔنَّ جَهَنَّمَ مِنۡكَ وَمِمَّنۡ تَبِعَكَ مِنۡهُمۡ اَجۡمَعِيۡنَ﴿۸۵﴾

८५) कि "तिमी र तिम्रो अनुशरण गर्नेहरू सबैबाट मैले पनि नर्कलाई भरिदिनेछु ।"

قُلۡ مَاۤ اَسۡـَٔلُكُمۡ عَلَيۡهِ مِنۡ اَجۡرٍ وَّمَاۤ اَنَا مِنَ الۡمُتَكَلِّفِيۡنَ﴿۸۶﴾

८६) हे पैगम्बर ! भनिदिनुस् कि "म तिमीसित यसको कुनै बदलाको इच्छुक छैन र न त म कुनै दिखावा गर्ने मध्येको" हूँ ।

اِنۡ هُوَ اِلَّا ذِكۡرٌ لِّلۡعٰلَمِيۡنَ﴿۸۷﴾

८७) यो (कुरआन) त समस्त संसारवालाहरूको निम्ति नसीहत र शिक्षा हो ।

وَلَتَعۡلَمُنَّ نَبَاَهٗ بَعۡدَ حِيۡنٍ﴿۸۸﴾

८८) निश्चित छ तिमी यसको वास्तविकता केही समय पछि जानी सक्ने छौ ।



# सूरतुज़्जुमर-३९



सूरतुज़्जुमर मक्की हो यसमा ७५ आयतहरू र ८ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) यस किताबको अवतरण अल्लाह अत्यन्त अधिपत्यशाली, तत्वदर्शीको तर्फबाट हो ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ①

२) हामीले यो किताब तिमीतिर सत्यताका साथ अवतरित गरेका हौं, तसर्थ तिमी अल्लाहको उपासना गर, धर्मलाई खास उसैको निम्ति विशेष गरेर ।

اِنَّاۤ اَنْزَلْنَاۤ اِلَيْكَ الْكِتٰبَ بِالْحَقِّ فَاعْبُدِ اللّٰهَ مُخْلِصًا لَّهُ الدِّيْنَ ②

३) खबरदार ! उपासना खास अल्लाह कै लागि हो । र जसले उस बाहेक अरु मित्र बनाएका छन् र भन्दछन् कि : “हामीले यिनीहरूलाई यसकारण पूज्दछौं कि हामीलाई अल्लाहको सामीप्यता प्राप्त गराइदिउन् ।” निश्चय नै अल्लाहले उनीहरूको बीचमा त्यस कुराको फैसला गरिदिनेछ जसमा उनीहरूले विवाद गरिराखेका छन् । अल्लाहले उसलाई मार्ग देखाउँदैन जो झूठो र अकृतज्ञ छ ।

اَلَا لِلّٰهِ الدِّيْنُ الْخَالِصُ ؕ وَالَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖۤ اَوْلِيَآءَ ۘ مَا نَعْبُدُهُمْ اِلَّا لِيُقَرِّبُوْنَاۤ اِلَى اللّٰهِ زُلْفٰى ؕ اِنَّ اللّٰهَ يَحْكُمُ بَيْنَهُمْ فِيْ مَا هُمْ فِيْهِ يَخْتَلِفُوْنَ ۬ؕ اِنَّ اللّٰهَ لَا يَهْدِيْ مَنْ هُوَ كٰذِبٌ كَفَّارٌ ③

४) यदि अल्लाहले आफ्नो सन्तान चाहेको भए, उसले आफ्नो सृष्टिहरूमध्येबाट, जसलाई चाहन्थ्यो, रोजिहाल्थ्यो ।

لَوْ اَرَادَ اللّٰهُ اَنْ يَّتَّخِذَ وَلَدًا لَّاصْطَفٰى مِمَّا يَخْلُقُ مَا يَشَآءُ ۙ سُبْحٰنَهٗ ؕ هُوَ اللّٰهُ الْوَاحِدُ الْقَهَّارُ ④

तर ऊ त उच्च छ ! उही अल्लाह एक्लै र सबैमाथि शक्तिमान् छ ।

خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ بِالْحَقِّ ۚ يُكَوِّرُ الَّيْلَ عَلَى النَّهَارِ وَيُكَوِّرُ النَّهَارَ عَلَى الَّيْلِ وَسَخَّرَ الشَّمْسَ وَالْقَمَرَ ۗ كُلٌّ يَّجْرِيْ لِاَجَلٍ مُّسَمًّى ۗ اَلَا هُوَ الْعَزِيْزُ الْغَفَّارُ ۝٥

५) उसैले आकाशहरू र धरतीलाई अत्यन्त राम्रो ढंगले सृष्टि गरेको छ । उसले रातीलाई दिनमाथि र दिनलाई रातीमाथि लपेटी दिन्छ र उसैले सूर्य र चन्द्रलाई (नियन्त्रणमा राखेर) काममा लगाएको छ । सबै एक निर्धारित समयसम्म संचालित छन् । निश्चित मान ऊ अधिपत्यशाली र क्षमाशील छ ।

خَلَقَكُمْ مِّنْ نَّفْسٍ وَّاحِدَةٍ ثُمَّ جَعَلَ مِنْهَا زَوْجَهَا وَاَنْزَلَ لَكُمْ مِّنَ الْاَنْعَامِ ثَمٰنِيَةَ اَزْوَاجٍ ۗ يَخْلُقُكُمْ فِيْ بُطُوْنِ اُمَّهٰتِكُمْ خَلْقًا مِّنْۢ بَعْدِ خَلْقٍ فِيْ ظُلُمٰتٍ ثَلٰثٍ ۗ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ لَهُ الْمُلْكُ ۗ لَاۤ اِلٰهَ اِلَّا هُوَ ۚ فَاَنّٰى تُصْرَفُوْنَ ۝٦

६) उसले तिमी सबैलाई एक ज्यान बाट सृष्टि गऱ्यो, अनि उसैबाट जोडी बनायो र उसैले तिम्रो निम्ति चौपायामध्ये आठ जोडीहरू (भाले-पोथी) बनायो । उसैले तिम्रा आमाहरूको पेटमा एउटा आकार पछि अर्को आकारमा सृजना गर्दछ तीन-तीन अँध्याराहरूमा । उही अल्लाह तिम्रो पालनकर्ता हो । सत्ता उसैको हो, उसबाहेक कोही सत्य पूज्य छैन । अनि तिमी कहाँ बहकी रहेका छौ ?

اِنْ تَكْفُرُوْا فَاِنَّ اللّٰهَ غَنِيٌّ عَنْكُمْ ۫ وَلَا يَرْضٰى لِعِبَادِهِ الْكُفْرَ ۚ وَاِنْ تَشْكُرُوْا يَرْضَهُ لَكُمْ ۗ وَلَا تَزِرُ وَازِرَةٌ وِّزْرَ اُخْرٰى ۗ ثُمَّ اِلٰى رَبِّكُمْ مَّرْجِعُكُمْ فَيُنَبِّئُكُمْ بِمَا كُنْتُمْ تَعْمَلُوْنَ ۗ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ۝٧

७) यदि तिमी अकृतज्ञता प्रकट गर्दछौ भने सम्झी राख अल्लाह तिमी सबैसित निस्पृह छ । र उसले आफ्ना भक्तहरूको कृतघ्नता रुचाउँदैन, र यदि तिमी कृतज्ञता प्रकट गर्दछौ भने, उसले यसलाई तिम्रो निम्ति

रुचाउनेछ । कसैले अर्काको लागि कुनै बोझ उठाउँदैन । अनि तिमीहरू सबैलाई आफ्नो पालनकर्तातिर फर्किजानुपर्नेछ । र उसले तिमीलाई बताइदिनेछ, जे तिमीले गरिराखेका हुनेछौ । निश्चय नै उसले छाती भित्रको कुरा पनि जान्दछ ।

८) र जब मानिसलाई कुनै कष्ट पुग्दछ तब राम्रो एकाग्र भएर आफ्नो पालनकर्तालाई पुकार्दछ अनि जब अल्लाहले उसमाथि आफ्नो अनुकम्पा गर्दछ, तब त्यसले त्यस कुरालाई बिर्सिहाल्दछ जसको निम्ति पहिला पुकारिराखेको थियो, र अल्लाहको समकक्षी ठहराउन थाल्दछ, ताकि यसको परिणाम स्वरूप त्यसले उसको मार्गबाट अरुलाई पनि विचलित गराइदेओस् । तपाईं भनिदिनुस् कि आफ्नो इन्कारको फाइदा केही दिनसम्म लिइहाल । अन्ततः तिमी नरकीहरूमध्येका हुनेछौ ।

وَإِذَا مَسَّ الْإِنسَانَ ضُرٌّ دَعَا رَبَّهُ مُنِيبًا إِلَيْهِ ثُمَّ إِذَا خَوَّلَهُ نِعْمَةً مِّنْهُ نَسِيَ مَا كَانَ يَدْعُو إِلَيْهِ مِن قَبْلُ وَجَعَلَ لِلَّهِ أَندَادًا لِّيُضِلَّ عَن سَبِيلِهِ ۚ قُلْ تَمَتَّعْ بِكُفْرِكَ قَلِيلًا ۖ إِنَّكَ مِنْ أَصْحَابِ النَّارِ ﴿٨﴾

९) त्यो व्यक्ति जसले रातको समयमा सजदा (उपासना) गर्दछ र उपासनामा उभिरहन्छ, आखिरतसित डर्छ र आफ्नो पालनकर्ताको दयाको आशा राख्दछ त्यो र यसको विपरीत गर्नेवाला के बराबर हुन सक्दछन् ? भन कि "के उनीहरू जो ज्ञानी छन् र उनीहरू जो अज्ञानी छन् दुवै समान हुनेछन् ? निश्चित

أَمَّنْ هُوَ قَانِتٌ آنَاءَ اللَّيْلِ سَاجِدًا وَقَائِمًا يَحْذَرُ الْآخِرَةَ وَيَرْجُو رَحْمَةَ رَبِّهِ ۗ قُلْ هَلْ يَسْتَوِي الَّذِينَ يَعْلَمُونَ وَالَّذِينَ لَا يَعْلَمُونَ ۗ إِنَّمَا يَتَذَكَّرُ أُولُو الْأَلْبَابِ ﴿٩﴾

रूपले शिक्षा त तिनैले ग्रहण गर्छन् जो बुद्धिवाला (सक्षम) छन् ।''

قُلْ يٰعِبَادِ الَّذِيْنَ اٰمَنُوا اتَّقُوْا رَبَّكُمْ ۗ لِلَّذِيْنَ اَحْسَنُوْا فِيْ هٰذِهِ الدُّنْيَا حَسَنَةٌ ۗ وَاَرْضُ اللّٰهِ وَاسِعَةٌ ۗ اِنَّمَا يُوَفَّى الصّٰبِرُوْنَ اَجْرَهُمْ بِغَيْرِ حِسَابٍ ⑩

१०) भनिदिनुस् कि ''हे ईमानवाला सेवकहरू आफ्नो पालनकर्तासित डर । जसले संसारमा असल कर्म गरेर देखाए, उनीहरूको निम्ति राम्रो प्रतिफल छ, र अल्लाहको धरती फराकिलो छ । धैर्यवानहरूकै निम्ति पूरा पूरा अनगिन्त पुरस्कार दिइन्छ ।

قُلْ اِنِّيْٓ اُمِرْتُ اَنْ اَعْبُدَ اللّٰهَ مُخْلِصًا لَّهُ الدِّيْنَ ⑪

११) तपाईं भनिदिनुस् कि ''मलाई आदेश भएको छ कि अल्लाहको उपासना यस्तो गरूँ कि उपासना उसैको निम्ति समर्पित गरिसकूं ।

وَاُمِرْتُ لِاَنْ اَكُوْنَ اَوَّلَ الْمُسْلِمِيْنَ ⑫

१२) र यो पनि मलाई आदेश भएको छ कि सबभन्दा बढी म स्वयम् आज्ञाकारी बनूँ ।''

قُلْ اِنِّيْٓ اَخَافُ اِنْ عَصَيْتُ رَبِّيْ عَذَابَ يَوْمٍ عَظِيْمٍ ⑬

१३) भनिदिनुस् कि ''मलाई त आफ्नो पालनकर्ताको अवज्ञा गर्दा ठूलो दिनको यातनाको भय लाग्दछ ।''

قُلِ اللّٰهَ اَعْبُدُ مُخْلِصًا لَّهٗ دِيْنِيْ ⑭

१४) भनिदिनुस् कि म त पूर्ण रूपले मात्र आफ्नो अल्लाहको उपासना गर्दछु

فَاعْبُدُوْا مَا شِئْتُمْ مِّنْ دُوْنِهٖ ۗ قُلْ اِنَّ الْخٰسِرِيْنَ الَّذِيْنَ خَسِرُوْٓا اَنْفُسَهُمْ وَاَهْلِيْهِمْ يَوْمَ الْقِيٰمَةِ ۗ اَلَا ذٰلِكَ هُوَ الْخُسْرَانُ الْمُبِيْنُ ⑮

१५) (अब) तिमी उसबाहेक जसलाई चाहन्छौ उपासना गर ।'' (घाटामा हुनेछौ) भनिदिनुस् ''वास्तवमा नोक्सानीवाला तिनै हुन् जसले स्वयम् आफूलाई र आफ्ना परिवारहरूलाई कयामतको दिन घाटामा पारिहाले'' । जानिराख, यही स्पष्ट घाटा हो ।

لَهُمْ مِّنْ فَوْقِهِمْ ظُلَلٌ مِّنَ النَّارِ وَمِنْ تَحْتِهِمْ ظُلَلٌ ۚ ذٰلِكَ يُخَوِّفُ اللّٰهُ بِهٖ عِبَادَهٗ ۚ يٰعِبَادِ فَاتَّقُوْنِ ﴿١٦﴾

१६) उनीहरूलाई उनीहरूको माथिबाट र उनीहरूको तलबाट पनि अग्निका ज्वालाका पात्रहरूले ढाँक्नेछन् । यी नै (ती कुराहरू) हुन्, जसबाट अल्लाहले आफ्नो सेवकहरूलाई डराउँछ, अतः हे मेरा सेवकहरू ! मसित डर मान्ने गर ।''

وَالَّذِيْنَ اجْتَنَبُوا الطَّاغُوْتَ اَنْ يَّعْبُدُوْهَا وَاَنَابُوْٓا اِلَى اللّٰهِ لَهُمُ الْبُشْرٰى ۚ فَبَشِّرْ عِبَادِ ﴿١٧﴾

१७) र जसले मूर्तिहरूको पूजालाई परित्याग गरेर अल्लाहतिर प्रवृत्त भए, उनीहरूको निम्ति शुभ सन्देश छ, (तसर्थ) मेरा सेवकहरूलाई खुशीको सन्देश सुनाइदिनुस् ।

الَّذِيْنَ يَسْتَمِعُوْنَ الْقَوْلَ فَيَتَّبِعُوْنَ اَحْسَنَهٗ ۚ اُولٰٓئِكَ الَّذِيْنَ هَدٰىهُمُ اللّٰهُ وَاُولٰٓئِكَ هُمْ اُولُوا الْاَلْبَابِ ﴿١٨﴾

१८) जसले कुरा ध्यानपूर्वक सुन्दछन् र राम्रा कुराको अनुपालन गर्दछन् यिनै ती मानिसहरू हुन् जसलाई अल्लाहले मार्गदर्शन प्रदान गऱ्यो र यिनै बुद्धि र विवेकवाला पनि हुन् ।

اَفَمَنْ حَقَّ عَلَيْهِ كَلِمَةُ الْعَذَابِ ۚ اَفَاَنْتَ تُنْقِذُ مَنْ فِى النَّارِ ﴿١٩﴾

१९) त के त्यो व्यक्ति जसको लागि सजायको कुरो प्रमाणित भइसकेको छ तपाईंले (उसलाई) नर्कबाट मुक्त गराउन सक्नुहुन्छ ?

لٰكِنِ الَّذِيْنَ اتَّقَوْا رَبَّهُمْ لَهُمْ غُرَفٌ مِّنْ فَوْقِهَا غُرَفٌ مَّبْنِيَّةٌ ۙ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ وَعْدَ اللّٰهِ ۚ لَا يُخْلِفُ اللّٰهُ الْمِيْعَادَ ﴿٢٠﴾

२०) हो, जुन मानिसहरू आफ्ना पालनकर्तासित डर मान्छन्, तिनीहरूका निम्ति उच्च महलहरू छन् जसको माथि पनि उच्च कक्षहरू हुनेछन् (र)उनीहरूका मुनि नहरहरू बगिराखेका छन् । (यो) अल्लाहको वाचा हो । अल्लाहले आफ्नो वाचाको उल्लंघन गर्दैन ।

२१) के तपाईले देख्नुभएन कि अल्लाहले आकाशबाट पानी झार्छ, अनि त्यसलाई धरतीको सतहमा पुऱ्याउँछ । अनि त्यसैबाट अनेक प्रकारका खेतीहरू उब्जाउँछ, फेरि तिनीहरू सुक्छन् र तपाईंले तिनलाई पहेलो रङ्गमा देख्नुहुन्छ । अनि उसले तिनलाई चूर चूर गरिदिन्छ । यसमा बुद्धिमानहरूको निम्ति धेरै शिक्षा छ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ أَنزَلَ مِنَ السَّمَاءِ مَاءً فَسَلَكَهُ يَنَابِيعَ فِي الْأَرْضِ ثُمَّ يُخْرِجُ بِهِ زَرْعًا مُّخْتَلِفًا أَلْوَانُهُ ثُمَّ يَهِيجُ فَتَرَاهُ مُصْفَرًّا ثُمَّ يَجْعَلُهُ حُطَامًا ۚ إِنَّ فِي ذَٰلِكَ لَذِكْرَىٰ لِأُولِي الْأَلْبَابِ ﴿٢١﴾

२२) के जुन मानिसको हृदय अल्लाहले इस्लामको लागि खोलिदिएको छ, र त्यसले आफ्नो पालनकर्ताबाट प्रकाश प्राप्त गरेको छ, अतः उनीहरूमाथि अफसोच छ, जसका हृदय अल्लाहको यादबाट खाली भई कठोर भइसकेका छन् यी मानिसहरू नै खुल्लम-खुल्ला मार्ग विचलनमा (ग्रस्त) छन् ।

أَفَمَن شَرَحَ اللَّهُ صَدْرَهُ لِلْإِسْلَامِ فَهُوَ عَلَىٰ نُورٍ مِّن رَّبِّهِ ۚ فَوَيْلٌ لِّلْقَاسِيَةِ قُلُوبُهُم مِّن ذِكْرِ اللَّهِ ۚ أُولَٰئِكَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٢٢﴾

२३) अल्लाहले सर्वोत्तम वाणी अवतरित गरेको छ जुन यस्तो किताब हो जसका आयतहरू आपसमा मिल्दछन्, र दोहऱ्याइन्छन्, जुन मानिसहरू आफ्ना पालनकर्तासित डर मान्छन्, त्यसबाट उनीहरूका शरीरका रौंहरू डरले ठाडो हुन्छन्, अन्तमा उनको शरीर र हृदय अल्लाहको वर्णनको लागि नरम र त्यस तर्फ प्रवृत्त हुन्छन् । यो अल्लाहको मार्गदर्शन हो, त्यसबाट उसले जसलाई चाहन्छ

اللَّهُ نَزَّلَ أَحْسَنَ الْحَدِيثِ كِتَابًا مُّتَشَابِهًا مَّثَانِيَ تَقْشَعِرُّ مِنْهُ جُلُودُ الَّذِينَ يَخْشَوْنَ رَبَّهُمْ ثُمَّ تَلِينُ جُلُودُهُمْ وَقُلُوبُهُمْ إِلَىٰ ذِكْرِ اللَّهِ ۚ ذَٰلِكَ هُدَى اللَّهِ يَهْدِي بِهِ مَن يَشَاءُ ۚ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِنْ هَادٍ ﴿٢٣﴾

सोझो मार्गमा हिंडाउँछ, र जसलाई अल्लाहले पथविचलित गरिदिन्छ, उसको निम्ति कोही मार्गदर्शक हुँदैन ।

२४) अब जसले कयामतको दिन यातनाबाट बच्न आफ्नो अनुहारलाई ढाल बनाउँदछ, त्यस्तो अत्याचारीहरूसित भनिनेछः कि "आफ्नो कर्मको स्वाद चाख ।"

اَفَمَنْ يَّتَّقِيْ بِوَجْهِهٖ سُوْٓءَ الْعَذَابِ يَوْمَ الْقِيٰمَةِ ؕ وَقِيْلَ لِلظّٰلِمِيْنَ ذُوْقُوْا مَا كُنْتُمْ تَكْسِبُوْنَ ﴿٢٤﴾

२५) उनीभन्दा पहिलाका मानिसहरूले पनि झूठा भने । अन्ततः उनीहरूमाथि त्यस ठाउँबाट यातना आइपुग्यो, जसको बारेमा तिनीहरूलाई कल्पना पनि थिएन ।

كَذَّبَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَاَتٰىهُمُ الْعَذَابُ مِنْ حَيْثُ لَا يَشْعُرُوْنَ ﴿٢٥﴾

२६) अनि अल्लाहले उनीहरूलाई सांसारिक जीवनमा पनि अपमानको स्वाद चखायो र अहिले आखिरतको यातना त यसभन्दा पनि ठूलो छ । काश ! उनीहरूले बुझ्न् ।

فَاَذَاقَهُمُ اللّٰهُ الْخِزْيَ فِي الْحَيٰوةِ الدُّنْيَا ۚ وَلَعَذَابُ الْاٰخِرَةِ اَكْبَرُ ۘ لَوْ كَانُوْا يَعْلَمُوْنَ ﴿٢٦﴾

२७) र निश्चित रूपले हामीले यस कुरआनमा मानिसहरूका निम्ति हरेक प्रकारका उदाहरणहरू प्रस्तुत गरिदिएका छौं, ताकि उनीहरूले उपदेश ग्रहण गरुन् ।

وَلَقَدْ ضَرَبْنَا لِلنَّاسِ فِيْ هٰذَا الْقُرْاٰنِ مِنْ كُلِّ مَثَلٍ لَّعَلَّهُمْ يَتَذَكَّرُوْنَ ﴿٢٧﴾ۚ

२८) यो कुरआन अरबीमा छ, जसमा कुनै त्रुटि (र विवाद) छैन, हुन सक्दछ उनीहरू संयमी बन्न सकुन् ।

قُرْاٰنًا عَرَبِيًّا غَيْرَ ذِيْ عِوَجٍ لَّعَلَّهُمْ يَتَّقُوْنَ ﴿٢٨﴾

२९) अल्लाहले (एउटा) उदाहरण प्रस्तुत

ضَرَبَ اللّٰهُ مَثَلًا رَّجُلًا فِيْهِ شُرَكَآءُ مُتَشٰكِسُوْنَ

وَرَجُلًا سَلَمًا لِّرَجُلٍ هَلْ يَسْتَوِيٰنِ مَثَلًا ۚ اَلْحَمْدُ لِلّٰهِ ۚ بَلْ اَكْثَرُهُمْ لَا يَعْلَمُوْنَ ﴿٢٩﴾

गर्दछ कि एउटा व्यक्ति छ, जसको अनेक जिद्दी साभ्रेदारहरू छन् । र एउटा अर्को व्यक्ति, त्यो हो जुन सम्पूर्ण रूपले एउटै व्यक्तिको दास हो । के विशेषताको दृष्टिकोणले दुवैको अवस्था एकसमान हुनेछ ? सम्पूर्ण प्रशंसा अल्लाहकै लागि हो, किन्तु कुरा यो छ कि उनीहरूमध्ये अधिकांशले बुझ्दैनन् ।

اِنَّكَ مَيِّتٌ وَّاِنَّهُمْ مَّيِّتُوْنَ ﴿٣٠﴾

३०) (हे पैगम्बर !) निश्चित छ तपाईलाई पनि मृत्यु आउने छ र यिनीहरू पनि मर्नेछन् ।

ثُمَّ اِنَّكُمْ يَوْمَ الْقِيٰمَةِ عِنْدَ رَبِّكُمْ تَخْتَصِمُوْنَ ﴿٣١﴾

३१) अनि तिमी सबै कयामतका दिन आफ्ना पालनकर्ताको सामु झगडा गर्नेछौ ।

فَمَنْ اَظْلَمُ مِمَّنْ كَذَبَ عَلَى اللّٰهِ وَكَذَّبَ بِالصِّدْقِ اِذْ جَآءَهٗ ۚ اَلَيْسَ فِيْ جَهَنَّمَ مَثْوًى لِّلْكٰفِرِيْنَ ﴿٣٢﴾

३२) अनि त्यस व्यक्तिभन्दा बढी अत्याचारी को होला, जसले अल्लाहको बारेमा झूठ कुरा गऱ्यो, र जब सत्य कुरा उसको नजिक आयो तब त्यसलाई झूठो बतायो । के जहन्नममा इन्कार गर्नेहरूको लागि बासस्थान छैन ?

وَالَّذِيْ جَآءَ بِالصِّدْقِ وَصَدَّقَ بِهٖٓ اُولٰٓئِكَ هُمُ الْمُتَّقُوْنَ ﴿٣٣﴾

३३) र जुन व्यक्तिले सत्य कुरा लिएर आयो र जसले त्यसको पुष्टि गऱ्यो, ती मानिसहरू नै संयमी (असल) हुन् ।

لَهُمْ مَّا يَشَآءُوْنَ عِنْدَ رَبِّهِمْ ۚ ذٰلِكَ جَزٰٓؤُا الْمُحْسِنِيْنَ ﴿٣٤﴾

३४) तिनीहरूले जे चाहनेछन्, उनीहरूको निम्ति प्रत्येक चीज उनीहरूको पालनकर्तासँग छ, असल मानिसहरूको यही नै पुरस्कार हो ।

३५) ताकि अल्लाहले उनीहरूका नराम्रा कार्यहरूलाई उनीहरूबाट टाढा हटाइदेओस् । र जुन उत्तम कर्म उनीहरूले गर्दथे, त्यसको उनीहरूलाई राम्रो प्रतिफल प्रदान गरोस् ।

لِيُكَفِّرَ اللّٰهُ عَنْهُمْ اَسْوَاَ الَّذِىْ عَمِلُوْا وَيَجْزِيَهُمْ اَجْرَهُمْ بِاَحْسَنِ الَّذِىْ كَانُوْا يَعْمَلُوْنَ ﴿٣٥﴾

३६) के अल्लाह आफ्ना बन्दाहरूको निम्ति पर्याप्त छैन? यिनीहरूले तपाईंलाई अल्लाहबाहेक अरुबाट डराई रहेका छन् र जसलाई अल्लाहले मार्ग विचलित गरि देओस्, त्यसलाई कसैले मार्ग दर्शन गर्न सक्दैन ।

اَلَيْسَ اللّٰهُ بِكَافٍ عَبْدَهٗ ؕ وَيُخَوِّفُوْنَكَ بِالَّذِيْنَ مِنْ دُوْنِهٖ ؕ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَمَا لَهٗ مِنْ هَادٍ ﴿٣٦﴾

३७) र जसलाई अल्लाहले मार्गदर्शन गरिदेओस्, त्यसलाई कसैले मार्ग विचलित गर्न सक्दैन । के अल्लाह सर्वशक्ति सम्पन्न र बदला लिनेवाल छैन ?

وَمَنْ يَّهْدِ اللّٰهُ فَمَا لَهٗ مِنْ مُّضِلٍّ ؕ اَلَيْسَ اللّٰهُ بِعَزِيْزٍ ذِى انْتِقَامٍ ﴿٣٧﴾

३८) यदि तपाईं उनीहरूसित सोध्नु हुन्छ कि, “आकाशहरू र धरतीलाई कसले सृष्टि गऱ्यो ?” त उनीहरूले अवश्य भन्नेछन्: कि “अल्लाहले ।” तपाईं भन्नुस् यदि अल्लाहले मलाई कुनै कष्ट पुऱ्याउन चाहन्छ भने के अल्लाह बाहेक जसलाई तिमीहरूले पुकार्द्छौ उनीहरूले त्यस कष्टलाई हटाउन सक्दछन् ? वा यदि अल्लाहले ममाथि कुनै कृपा गर्न चाहन्छ भने के उनीहरूले उसको कृपालाई रोक्न सक्दछन् ?”

وَلَئِنْ سَاَلْتَهُمْ مَّنْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ لَيَقُوْلُنَّ اللّٰهُ ؕ قُلْ اَفَرَءَيْتُمْ مَّا تَدْعُوْنَ مِنْ دُوْنِ اللّٰهِ اِنْ اَرَادَنِىَ اللّٰهُ بِضُرٍّ هَلْ هُنَّ كٰشِفٰتُ ضُرِّهٖۤ اَوْ اَرَادَنِىْ بِرَحْمَةٍ هَلْ هُنَّ مُمْسِكٰتُ رَحْمَتِهٖ ؕ قُلْ حَسْبِىَ اللّٰهُ ؕ عَلَيْهِ يَتَوَكَّلُ الْمُتَوَكِّلُوْنَ ﴿٣٨﴾

तपाईं भनिदिनुस् ! कि मलाई अल्लाह नै पर्याप्त छ, भरोसा गर्नेहरू उसैमाथि भरोसा गर्दछन् ।

३९) भनिदिनुस् कि "हे मेरो जाति बन्धुका मानिसहरू ! तिमी आफ्नो ठाउँमा कर्म गर्दै जाऊ । म पनि कर्म गर्दै जान्छु । शीघ्र नै तिमीलाई थाहा भइहाल्नेछ,

قُلْ يٰقَوْمِ اعْمَلُوْا عَلٰى مَكَانَتِكُمْ اِنِّيْ عَامِلٌ ۚ فَسَوْفَ تَعْلَمُوْنَ ﴿٣٩﴾

४०) कि कसमाथि अपमानपूर्ण यातना र सधैंको लागि सजाय आउँछ ?

مَنْ يَّأْتِيْهِ عَذَابٌ يُّخْزِيْهِ وَيَحِلُّ عَلَيْهِ عَذَابٌ مُّقِيْمٌ ﴿٤٠﴾

४१) हामीले त तपाईं माथि यो किताब मानिसहरूको लागि सत्यका साथ अवतरित गरेका छौं । अतः जसले सिधा मार्ग ग्रहण गऱ्यो त उसको आफ्नै लागि नाफा छ र जो विचलित भयो, त त्यो विचलित भई आफूलाई नै हानि पुऱ्याउँदछ । र तपाईं उनीहरूको जिम्मेवार होइन ।

اِنَّآ اَنْزَلْنَا عَلَيْكَ الْكِتٰبَ لِلنَّاسِ بِالْحَقِّ ۚ فَمَنِ اهْتَدٰى فَلِنَفْسِهٖ ۚ وَمَنْ ضَلَّ فَاِنَّمَا يَضِلُّ عَلَيْهَا ۚ وَمَآ اَنْتَ عَلَيْهِمْ بِوَكِيْلٍ ﴿٤١﴾

४२) अल्लाहले नै प्राणहरूलाई उनीहरूको मृत्युको समय र जसको मृत्यु आएन त्यसलाई उसको निद्राको अवस्थामा ग्रस्त गरिहाल्दछ । अनि जसको मृत्युको निर्णय गरिसकेको छ, त्यसलाई रोकिराख्दछ । र अरु प्राणहरूलाई एक निर्धारित समयसम्मको लागि छोडिदिन्छ । निश्चय नै यसमा सोचविचार गर्नेहरूको निम्ति कैयन् निशानीहरू छन् ।

اَللّٰهُ يَتَوَفَّى الْاَنْفُسَ حِيْنَ مَوْتِهَا وَالَّتِيْ لَمْ تَمُتْ فِيْ مَنَامِهَا ۚ فَيُمْسِكُ الَّتِيْ قَضٰى عَلَيْهَا الْمَوْتَ وَيُرْسِلُ الْاُخْرٰۤى اِلٰۤى اَجَلٍ مُّسَمًّى ۗ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يَّتَفَكَّرُوْنَ ﴿٤٢﴾

अَمِ اتَّخَذُوا مِنْ دُوْنِ اللّٰهِ شُفَعَآءَ ؕ قُلْ اَوَلَوْ كَانُوْا لَا يَمْلِكُوْنَ شَيْـًٔا وَّلَا يَعْقِلُوْنَ ﴿٤٣﴾

४३) के उनीहरूले अल्लाह बाहेक अरुलाई सिफारिश गर्नेहरू बनाएका छन् ? तपाईं भनिदिनुस् कि "चाहे उनीहरू कुनै कुराको पनि अधिकार राख्दैनन् र न केही बुझ्छन्, तैपनि ?"

قُلْ لِّلّٰهِ الشَّفَاعَةُ جَمِيْعًا ؕ لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ ثُمَّ اِلَيْهِ تُرْجَعُوْنَ ﴿٤٤﴾

४४) भनिदिनुस् ! कि "सबै सिफारिशको मालिक त अल्लाह नै हो । सबै आकाशहरू र जमीनको सत्ता उसैको लागि छ । अनि तिमी सबै उसैतिर फर्केर जानेछौ ।"

وَاِذَا ذُكِرَ اللّٰهُ وَحْدَهُ اشْمَاَزَّتْ قُلُوْبُ الَّذِيْنَ لَا يُؤْمِنُوْنَ بِالْاٰخِرَةِ ۚ وَاِذَا ذُكِرَ الَّذِيْنَ مِنْ دُوْنِهٖٓ اِذَا هُمْ يَسْتَبْشِرُوْنَ ﴿٤٥﴾

४५) र जब एक्लो अल्लाहको चर्चा गरिन्छ तब जुन मानिसहरू आखिरतमा विश्वास गर्दैनन् उनीहरूको हृदय घृणाले भरिन्छ, तर जब उस बाहेक अरुहरूको चर्चा आउँदछ तब उनीहरू आनन्दले प्रफुल्ल भइहाल्दछन् ।

قُلِ اللّٰهُمَّ فَاطِرَ السَّمٰوٰتِ وَالْاَرْضِ عٰلِمَ الْغَيْبِ وَالشَّهَادَةِ اَنْتَ تَحْكُمُ بَيْنَ عِبَادِكَ فِيْ مَا كَانُوْا فِيْهِ يَخْتَلِفُوْنَ ﴿٤٦﴾

४६) तपाईं भन्नुस् कि "हे अल्लाह ! आकाशहरू र धरतीको स्रष्टा (र) अदृश्य र प्रकट कुराको ज्ञाता ! तिमीले नै आफ्ना भक्तहरूमा ती कुराहरूको, निर्णय गर्नेछौ जसमा उनीहरूले विवाद गरिराखेका छन् ।"

وَلَوْ اَنَّ لِلَّذِيْنَ ظَلَمُوْا مَا فِي الْاَرْضِ جَمِيْعًا وَّمِثْلَهٗ مَعَهٗ لَافْتَدَوْا بِهٖ مِنْ سُوْٓءِ الْعَذَابِ يَوْمَ الْقِيٰمَةِ ؕ وَبَدَا لَهُمْ مِّنَ اللّٰهِ مَا لَمْ يَكُوْنُوْا يَحْتَسِبُوْنَ ﴿٤٧﴾

४७) यदि अत्याचारीहरू सँग धरतीमा उपलब्ध सबै कुरा र त्यसको साथै त्यति नै अरु पनि हुनेछ भने, त उनीहरूले कयामतको दिन नरास्रो यातनाबाट बच्नको निम्ति ती सबै कुरा दिहाल्नेछन् । र उनको सामु

अल्लाहतिरबाट त्यो प्रकट हुनेछ जसको उनीहरूले कल्पना पनि गर्दैन्थे ।

وَبَدَا لَهُمْ سَيِّاٰتُ مَا كَسَبُوْا وَحَاقَ بِهِمْ مَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ﴿٤٨﴾

४८) र उनीहरूले जे गरेका थिए त्यसको नराम्रो प्रभाव प्रकट भइहाल्नेछ र जसको (यातना) उनीहरूले हाँसो गर्दथे, त्यसले उनीहरूलाई आई घेर्नेछ ।

فَاِذَا مَسَّ الْاِنْسَانَ ضُرٌّ دَعَانَا ثُمَّ اِذَا خَوَّلْنٰهُ نِعْمَةً مِّنَّا قَالَ اِنَّمَاۤ اُوْتِيْتُهٗ عَلٰى عِلْمٍ بَلْ هِيَ فِتْنَةٌ وَّلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٤٩﴾

४९) जब मानिसहरूलाई कुनै कष्ट पुग्छ तब उसले हामीलाई पुकार्दछ अनि जब हाम्रो तर्फबाट उसमाथि कुनै कृपा प्रदान भई सक्छ तब भन्दछः "कि यो त मलाई मेरो ज्ञानको कारणले प्राप्त भएको छ ।" (होइन) बरु यो त एउटा परीक्षा हो, तर उनीहरूमध्ये धेरै अज्ञानी छन् ।

قَدْ قَالَهَا الَّذِيْنَ مِنْ قَبْلِهِمْ فَمَاۤ اَغْنٰى عَنْهُمْ مَّا كَانُوْا يَكْسِبُوْنَ ﴿٥٠﴾

५०) जुन मानिसहरू यिनीहरू भन्दा अगाडि थिए, उनीहरूले पनि यही भन्ने गर्दथे, तर उनीहरूको कामकुरा उनीहरूलाई केही काम लागेन ।

فَاَصَابَهُمْ سَيِّاٰتُ مَا كَسَبُوْا وَالَّذِيْنَ ظَلَمُوْا مِنْ هٰۤؤُلَاۤءِ سَيُصِيْبُهُمْ سَيِّاٰتُ مَا كَسَبُوْا وَمَا هُمْ بِمُعْجِزِيْنَ ﴿٥١﴾

५१) अनि जेजति उनीहरूले कमाए, त्यसका नराम्रा कुराहरूको प्रभाव उनीहरूमाथि आइपऱ्यो र यिनीहरूमध्ये पनि जुन मानिसहरूले अत्याचार गरे, यिनीहरूमाथि पनि जे-जति उनीहरूले कमाए त्यसका नराम्रो परिणाम छिट्टै आइहाल्नेछ । र, यिनीहरूले (हामीलाई) हराउन सक्ने छैनन् ।

५२) के उनीहरूलाई यो थाहा छैन कि अल्लाहले नै जसको निम्ति चाहन्छ जीविका प्रशस्त गरिदिन्छ र जसको निम्ति चाहन्छ सीमित गरिदिन्छ ? यसमा ईमान ल्याउनेहरूका निम्ति ठूला निशानीहरू छन् ।

اَوَلَمْ يَعْلَمُوْٓا اَنَّ اللّٰهَ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ ۭ اِنَّ فِيْ ذٰلِكَ لَاٰيٰتٍ لِّقَوْمٍ يُّؤْمِنُوْنَ ﴿٥٢﴾

५३) मेरो तर्फबाट भन्नुस् कि "हे मेरा भक्तहरू ! जसले आफूमाथि नै अतिक्रमण गरेका छन्, तिमी अल्लाहको दयाबाट निराश नहोऊ । निःसन्देह अल्लाहले सारा पापहरूलाई क्षमा गरिदिन्छ । निश्चय नै ऊ बडो क्षमाशील र अत्यन्त दयावान् छ ।

قُلْ يٰعِبَادِيَ الَّذِيْنَ اَسْرَفُوْا عَلٰٓي اَنْفُسِهِمْ لَا تَقْنَطُوْا مِنْ رَّحْمَةِ اللّٰهِ ۭ اِنَّ اللّٰهَ يَغْفِرُ الذُّنُوْبَ جَمِيْعًا ۭ اِنَّهٗ هُوَ الْغَفُوْرُ الرَّحِيْمُ ﴿٥٣﴾

५४) यसभन्दा पहिला कि तिमीलाई यातना आओस्, आफ्नो पालनकर्तातिर प्रवृत्त होऊ र उसको आज्ञाकारी भइहाल । त्यो यातना आएपछि तिम्रो सहायता गरिने छैन ।

وَاَنِيْبُوْٓا اِلٰى رَبِّكُمْ وَاَسْلِمُوْا لَهٗ مِنْ قَبْلِ اَنْ يَّاْتِيَكُمُ الْعَذَابُ ثُمَّ لَا تُنْصَرُوْنَ ﴿٥٤﴾

५५) र यसभन्दा पहिला कि तिमीमाथि एक्कासी यातना आओस् र तिमीलाई थाहा पनि नहोस्, त्यस सर्वोत्तम कुराको अनुशरण गर जुन कि तिम्रो पालनकर्ताको तर्फबाट तिम्रो लागि अवतरित भएको छ ।

وَاتَّبِعُوْٓا اَحْسَنَ مَآ اُنْزِلَ اِلَيْكُمْ مِّنْ رَّبِّكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَكُمُ الْعَذَابُ بَغْتَةً وَّاَنْتُمْ لَا تَشْعُرُوْنَ ﴿٥٥﴾

५६) कहीं यस्तो नहोस्, कि कुनै व्यक्तिले भन्न थालोस् : "हाय अफसोच ! त्यसमाथि जुन बे-वास्ता मैले अल्लाह प्रति गरें र म त उपहास गर्नेहरूमा नै शम्मिलित रहें,

اَنْ تَقُوْلَ نَفْسٌ يّٰحَسْرَتٰى عَلٰي مَا فَرَّطْتُّ فِيْ جَنْۢبِ اللّٰهِ وَاِنْ كُنْتُ لَمِنَ السّٰخِرِيْنَ ﴿٥٦﴾

أَوْ تَقُولَ لَوْ أَنَّ اللَّهَ هَدَانِي لَكُنتُ مِنَ الْمُتَّقِينَ ﴿٥٧﴾

५७) वा यो भन्न थालोस् कि, "यदि अल्लाहले मलाई मार्गदर्शन गरेको भए म पनि डर मान्नेहरूमध्येको हुने थिएँ ।"

أَوْ تَقُولَ حِينَ تَرَى الْعَذَابَ لَوْ أَنَّ لِي كَرَّةً فَأَكُونَ مِنَ الْمُحْسِنِينَ ﴿٥٨﴾

५८) वा यातना देखेर यो भन्न थालोस्: कि "यदि फेरि एकपटक संसारमा मैले जान पाएको भने म असल मानिसहरूमध्येको हुने थिएँ" ।

بَلَىٰ قَدْ جَاءَتْكَ آيَاتِي فَكَذَّبْتَ بِهَا وَاسْتَكْبَرْتَ وَكُنتَ مِنَ الْكَافِرِينَ ﴿٥٩﴾

५९) (अल्लाहको आदेश हुनेछ), नि:संदेह मेरा आयतहरू तिम्रो सामु आइपुगेका थिए, जसलाई तिमीले झूठा भन्यौ र घमण्ड गर्‍यौ र इन्कार गर्नेहरूमा शम्मिलित भयौ ।

وَيَوْمَ الْقِيَامَةِ تَرَى الَّذِينَ كَذَبُوا عَلَى اللَّهِ وُجُوهُهُم مُّسْوَدَّةٌ ۚ أَلَيْسَ فِي جَهَنَّمَ مَثْوًى لِّلْمُتَكَبِّرِينَ ﴿٦٠﴾

६०) जसले अल्लाहको बारेमा झूठा कुरा गरेका छन् तपाईंले देख्नु हुनेछ कि कयामतको दिन उनका अनुहारहरू काला भइसकेका हुनेछन् । के अहंकारीहरूको बासस्थान नरकमा होइन ?

وَيُنَجِّي اللَّهُ الَّذِينَ اتَّقَوْا بِمَفَازَتِهِمْ لَا يَمَسُّهُمُ السُّوءُ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦١﴾

६१) र जसले संयम गरेका छन्, उनीहरूलाई अल्लाहले उनीहरूको सफलताका साथ मुक्ति प्रदान गर्नेछ । उनीहरूलाई न कुनै अनिष्टले छुन सक्ने छ र नत उनीहरू कुनै प्रकारले शोकाकुल हुनेछन् ।

اللَّهُ خَالِقُ كُلِّ شَيْءٍ ۖ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ وَكِيلٌ ﴿٦٢﴾

६२) अल्लाह हरेक कुराको स्रष्टा हो र उही नै हरेक कुराको संरक्षक हो ।

لَهٗ مَقَالِيْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ وَالَّذِيْنَ كَفَرُوْا
بِاٰيٰتِ اللّٰهِ اُولٰٓئِكَ هُمُ الْخٰسِرُوْنَ ﴿٦٣﴾

६३) उसैको पासमा आकाशहरू र धरतीका साँचोहरू छन् । जस जसले अल्लाहका आयतहरूलाई इन्कार गरे, तिनैहरूनै घाटामा छन् ।

قُلْ اَفَغَيْرَ اللّٰهِ تَاْمُرُوْٓنِّيْٓ اَعْبُدُ اَيُّهَا
الْجٰهِلُوْنَ ﴿٦٤﴾

६४) तपाईं भन्नुस् कि: हे अज्ञानीहरू "के तिमीले मसँग अल्लाहबाहेक अरु कसैको उपासना गर्न भन्दछौ" ?

وَلَقَدْ اُوْحِيَ اِلَيْكَ وَاِلَى الَّذِيْنَ مِنْ
قَبْلِكَ ۚ لَئِنْ اَشْرَكْتَ لَيَحْبَطَنَّ عَمَلُكَ
وَلَتَكُوْنَنَّ مِنَ الْخٰسِرِيْنَ ﴿٦٥﴾

६५) (र हे मोहम्मद !) निश्चित रूपले तपाईंमाथि र तपाईंभन्दा पहिला गुज्रिसकेका (नबीहरू) माथि वह्य पठाइएको थियो कि "यदि तिमीले शिर्क गर्‍यौ भने तिमीले गरेका सबैकुरा अनिवार्य रूपले व्यर्थ भइहाल्नेछन् र तिमी अवश्य नै घाटामा पर्नेवालाहरूमध्येका हुनेछौ ।"

بَلِ اللّٰهَ فَاعْبُدْ وَكُنْ مِّنَ الشّٰكِرِيْنَ ﴿٦٦﴾

६६) (होइन) बरु तिमी अल्लाह कै उपासना गर र कृतज्ञता प्रकट गर्नेवालाहरूमध्येको भइहाल ।

وَمَا قَدَرُوا اللّٰهَ حَقَّ قَدْرِهٖ ۖ وَالْاَرْضُ
جَمِيْعًا قَبْضَتُهٗ يَوْمَ الْقِيٰمَةِ وَالسَّمٰوٰتُ مَطْوِيّٰتٌۢ
بِيَمِيْنِهٖ ؕ سُبْحٰنَهٗ وَتَعٰلٰى عَمَّا يُشْرِكُوْنَ ﴿٦٧﴾

६७) र उनीहरूले अल्लाहलाई जस्तो सम्मान गर्नु पर्छ गर्न सकेनन्, जबकि कयामतको दिन सम्पूर्ण धरती उसको मुट्ठीमा हुनेछ र आकाशहरू उसको दाहिने हातमा बेरिएका हुनेछन्, ऊ महान् र उच्च छ त्यस्तो प्रत्येक कुरा भन्दा जसलाई उनीहरूले उसको साझेदार ठहराउँछन् ।

وَنُفِخَ فِي الصُّوْرِ فَصَعِقَ مَنْ فِي السَّمٰوٰتِ وَمَنْ
فِي الْاَرْضِ اِلَّا مَنْ شَآءَ اللّٰهُ ؕ ثُمَّ نُفِخَ فِيْهِ اُخْرٰى
فَاِذَا هُمْ قِيَامٌ يَّنْظُرُوْنَ ﴿٦٨﴾

६८) र जब सूर फूँकिनेछ तब, जो आकाशमा छन् र जो धरतीमा छन्, सबै मूर्छित भई ढल्नेछन् (तर)

जसलाई अल्लाहले चाहन्छ, फेरि दोस्रो पटक सूर फूँकिनेछ, तब तुरुन्तै सबै उभेर हेर्न थाल्नेछन् ।

وَاَشْرَقَتِ الْاَرْضُ بِنُوْرِ رَبِّهَا وَوُضِعَ الْكِتٰبُ وَجِایْٓءَ بِالنَّبِيّٖنَ وَالشُّهَدَآءِ وَقُضِيَ بَيْنَهُمْ بِالْحَقِّ وَهُمْ لَا يُظْلَمُوْنَ ﴿٦٩﴾

६९) र धरती आफ्नो पालनकर्ताको प्रकाशले जगमग हुनेछ र कर्मको खाता खोलेर राखिदिइनेछ, पैगम्बर र (अन्य) साक्षीहरू उपस्थित गराइनेछन् र उनीहरूमा इन्साफको साथ निर्णय गरिनेछ र कसैमाथि अन्याय गरिने छैन ।

وَوُفِّيَتْ كُلُّ نَفْسٍ مَّا عَمِلَتْ وَهُوَ اَعْلَمُ بِمَا يَفْعَلُوْنَ ﴿٧٠﴾

७०) र जसले जुन कर्म गरेको हुन्छ त्यसलाई त्यसको पूरा-पूरा प्रतिफल दिइने छ र जे-जति यिनीहरूले गर्दछन् उसलाई सबै राम्ररी थाहा छ ।

وَسِيْقَ الَّذِيْنَ كَفَرُوْٓا اِلٰى جَهَنَّمَ زُمَرًا ؕ حَتّٰٓى اِذَا جَآءُوْهَا فُتِحَتْ اَبْوَابُهَا وَقَالَ لَهُمْ خَزَنَتُهَآ اَلَمْ يَاْتِكُمْ رُسُلٌ مِّنْكُمْ يَتْلُوْنَ عَلَيْكُمْ اٰيٰتِ رَبِّكُمْ وَيُنْذِرُوْنَكُمْ لِقَآءَ يَوْمِكُمْ هٰذَا ؕ قَالُوْا بَلٰى وَلٰكِنْ حَقَّتْ كَلِمَةُ الْعَذَابِ عَلَى الْكٰفِرِيْنَ ﴿٧١﴾

७१) र काफिरहरू समूह-समूहमा नर्कतिर लगिनेछन्, यहाँसम्म कि जब उनीहरू त्यहाँ पुग्नेछन् त त्यसका द्वारहरू तिनीहरूका लागि खोलिदिइनेछन् र त्यसका द्वारपाल उनीहरूसित भन्नेछन्: "के तिम्रो पासमा तिमीहरूमध्येबाटै रसूल आएका थिएनन् ? जसले तिमीलाई तिम्रो पालनकर्ताका आयतहरू सुनाइराखेका थिए र तिमीलाई तिम्रो यस दिनको आगमनबाट सचेत गरिराखेका थिए ?" उनीहरूले जबाफ दिनेछन्: "हो ठीक हो (उनीहरू त आएका थिए)" तर इन्कार गर्नेहरूमाथि यातनाको आदेश भएर नै रह्यो ।

७२) भनिनेछः अब नर्कका द्वारहरूमा प्रवेश गर । त्यसमा सधैं रहनको निम्ति । घमण्ड (अट्टेरी) गर्नेहरूको निम्ति साह्रै नराम्रो बासस्थान हो ।

قِيْلَ ادْخُلُوْٓا اَبْوَابَ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ۚ فَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِيْنَ ﴿٧٢﴾

७३) र जुन मानिसहरू आफ्ना पालनकर्तासित डर मान्दथे, उनीहरू समूह-समूह गरी स्वर्गतिर लगिनेछन्, यहाँसम्म कि जब उनीहरू त्यसको नजिक पुग्नेछन्, त त्यसका द्वारहरू खोलिदिइनेछन् र त्यसका द्वारपालले उनीहरूसित भन्नेछन्: कि "तिमीमाथि सलाम । तिमी प्रफुल्लित भइहाल । अब यसमा सधैंको निम्ति प्रवेश गरिहाल ।

وَسِيْقَ الَّذِيْنَ اتَّقَوْا رَبَّهُمْ اِلَى الْجَنَّةِ زُمَرًا ۭ حَتّٰٓى اِذَا جَاۗءُوْهَا وَفُتِحَتْ اَبْوَابُهَا وَقَالَ لَهُمْ خَزَنَتُهَا سَلٰمٌ عَلَيْكُمْ طِبْتُمْ فَادْخُلُوْهَا خٰلِدِيْنَ ﴿٧٣﴾

७४) यिनीहरूले भन्नेछन् कि: "अल्लाहको कृपा छ जसले आफ्नो वाचा हामीसित पूरा गरेर देखायो, र हामीलाई यस स्थानको उत्तराधिकारी बनाइदियो, कि हामी स्वर्गमा जुन ठाउँमा चाहन्छौं, बस्न सक्छौं । अतः (असल) कर्म गर्नेहरूको निम्ति कति राम्रो प्रतिफल छ ।

وَقَالُوا الْحَمْدُ لِلّٰهِ الَّذِيْ صَدَقَنَا وَعْدَهٗ وَاَوْرَثَنَا الْاَرْضَ نَتَبَوَّاُ مِنَ الْجَنَّةِ حَيْثُ نَشَاۗءُ ۚ فَنِعْمَ اَجْرُ الْعٰمِلِيْنَ ﴿٧٤﴾

७५) तिमीले फरिश्ताहरूलाई देख्नेछौ कि उनीहरू सिंहासनको चारैतिर पंक्ति बद्ध भई आफ्नो पालनकर्ताको गुणगान गरिराखेका हुन्छन् । र यिनीहरू बीच राम्रो फैसला (न्याय) गरिनेछ र भनिनेछः "सम्पूर्ण प्रशंसा अल्लाहकै लागि हो । जो सम्पूर्ण जगत्को पालनकर्ता हो" ।

وَتَرَى الْمَلٰۗىِٕكَةَ حَاۗفِّيْنَ مِنْ حَوْلِ الْعَرْشِ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ ۚ وَقُضِيَ بَيْنَهُمْ بِالْحَقِّ وَقِيْلَ الْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿٧٥﴾

## सूरतुल् मोमिन-४०



सूरतुल् मोमिन मक्की हो यसमा ८५ आयतहरू र ९ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

१) हामीम

حٰمٓ ۚ﴿۱﴾

२) यस किताबको अवतरण उस सर्वशक्तिशाली र सर्वज्ञ अल्लाहको तर्फबाट हो ।

تَنۡزِيۡلُ الۡكِتٰبِ مِنَ اللّٰهِ الۡعَزِيۡزِ الۡعَلِيۡمِ ۙ﴿۲﴾

३) जो गुनाह(पाप) क्षमा गर्नेवाला र तौबा (प्रायश्चित) स्वीकार गर्नेवाला, कठोर दण्ड दिनेवाला र शक्तिवाला छ । उस बाहेक कोही सत्य पूज्य छैन । उसैतिर फर्कि जानुपर्नेछ ।

غَافِرِ الذَّنۡۢبِ وَقَابِلِ التَّوۡبِ شَدِيۡدِ الۡعِقَابِ ذِى الطَّوۡلِ ؕ لَاۤ اِلٰهَ اِلَّا هُوَ ؕ اِلَيۡهِ الۡمَصِيۡرُ ﴿۳﴾

४) अल्लाहका आयतहरूमा ती मानिसहरूले नै विवाद गर्दछन्, जो काफिर छन्, तसर्थ उनीहरूको शहरहरूमा हिंड्डुल (आवागमन) ले तपाईंलाई भ्रममा नपारोस् ।

مَا يُجَادِلُ فِىۡۤ اٰيٰتِ اللّٰهِ اِلَّا الَّذِيۡنَ كَفَرُوۡا فَلَا يَغۡرُرۡكَ تَقَلُّبُهُمۡ فِى الۡبِلَادِ ﴿۴﴾

५) नूहको जाति बन्धुले र उहाँ पश्चातका समूहहरूले पनि झूठा भने र हर उम्मतले (कौमले) आफ्ना पैगम्बरहरूको बारेमा इच्छा गरे कि तिनलाई समातिहालुन् र उनीहरूले असत्यको सहारा लिएर झगडा गरे, ताकि तिनबाट सत्यलाई बिगारिदेऊन् । अतः उनीहरूलाई

كَذَّبَتۡ قَبۡلَهُمۡ قَوۡمُ نُوۡحٍ وَّالۡاَحۡزَابُ مِنۡۢ بَعۡدِهِمۡ ۪ وَهَمَّتۡ كُلُّ اُمَّةٍۢ بِرَسُوۡلِهِمۡ لِيَاۡخُذُوۡهُ وَجَادَلُوۡا بِالۡبَاطِلِ لِيُدۡحِضُوۡا بِهِ الۡحَقَّ فَاَخَذۡتُهُمۡ ۫ فَكَيۡفَ كَانَ عِقَابِ ﴿۵﴾

मैले समातिहालें, तसर्थ मेरो यातना कस्तो भयो ?

وَكَذٰلِكَ حَقَّتْ كَلِمَتُ رَبِّكَ عَلَى الَّذِيْنَ كَفَرُوْٓا اَنَّهُمْ اَصْحٰبُ النَّارِ ۝

६) र यस्तै प्रकारले काफिरहरूको बारेमा तपाईंको पालनकर्ताको आदेश पूरा भइसकेको छ कि उनीहरू नर्कबासी छन् ।

اَلَّذِيْنَ يَحْمِلُوْنَ الْعَرْشَ وَمَنْ حَوْلَهٗ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ وَيُؤْمِنُوْنَ بِهٖ وَيَسْتَغْفِرُوْنَ لِلَّذِيْنَ اٰمَنُوْا ۚ رَبَّنَا وَسِعْتَ كُلَّ شَيْءٍ رَّحْمَةً وَّعِلْمًا فَاغْفِرْ لِلَّذِيْنَ تَابُوْا وَاتَّبَعُوْا سَبِيْلَكَ وَقِهِمْ عَذَابَ الْجَحِيْمِ ۝

७) जसले (स्वर्गदूत) अल्लाहको आसन उचालेका छन् र उसको वरिपरिका फरिश्ताहरू आफ्नो पालनकर्ताको गुणगान् गर्दछन् र उसमाथि ईमान राख्दछन् र ईमानवाला मानिसहरूको निम्ति क्षमाको प्रार्थना गर्दछन्, भन्दछन्, कि: "हे हाम्रो पालनकर्ता ! तिमीले आफ्नो दयालुता र आफ्नो ज्ञानले प्रत्येक कुरामा व्याप्क छौ । अत: जुन मानिसहरूले प्रायश्चित गरे र तिम्रो मार्गको अनुशरण गरे, उनीहरूलाई क्षमा गरिदेऊ र प्रज्वलित नर्कको आगोको यातनाबाट उनीहरूलाई बचाइहाल ।

رَبَّنَا وَاَدْخِلْهُمْ جَنّٰتِ عَدْنِ ِالَّتِيْ وَعَدْتَّهُمْ وَمَنْ صَلَحَ مِنْ اٰبَآئِهِمْ وَاَزْوَاجِهِمْ وَذُرِّيّٰتِهِمْ ۭ اِنَّكَ اَنْتَ الْعَزِيْزُ الْحَكِيْمُ ۝

८) हे हाम्रो पालनकर्ता ! तिमीले उनीहरूलाई सधैं बासको निम्ति स्वर्गहरूमा प्रवेश गराऊ, जसको तिमीले उनीहरूसित वाचा गरेका छौ, र उनीहरूका बाउ बाजे र उनीहरूका पत्नीहरू र उनका सन्ततिहरूमध्ये जो असल आचरण वाला छन् उनीहरूलाई पनि । नि:सन्देह तिमी अधिपत्यशाली अत्यन्त तत्वदर्शी हौ ।

وَقِهِمُ السَّيِّاٰتِ ۭ وَمَنْ تَقِ السَّيِّاٰتِ يَوْمَىِٕذٍ فَقَدْ رَحِمْتَهٗ ۭ وَذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ۝٩

९) र उनीहरूलाई खराबीबाट पनि बचाइराख, सत्य त यो हो कि जसलाई तिमीले त्यस दिनको यातनाबाट बचायौ, त निःसन्देह उसमाथि तिम्रो दया भयो र यही नै ठूलो सफलता हो ।''

اِنَّ الَّذِيْنَ كَفَرُوْا يُنَادَوْنَ لَمَقْتُ اللّٰهِ اَكْبَرُ مِنْ مَّقْتِكُمْ اَنْفُسَكُمْ اِذْ تُدْعَوْنَ اِلَى الْاِيْمَانِ فَتَكْفُرُوْنَ ۝١٠

१०) निश्चय नै जुन मानिसहरूले इन्कार गरे उनीहरूलाई पुकारेर भनिनेछः कि ''तिमीहरू स्वयम् आफूसित जुन विद्वेष एवम् क्रोध गर्दथ्यौ, तिमीप्रति अल्लाहको क्रोध त्यो भन्दा पनि बढी छ, किनभने जब तिमीलाई ईमानतिर बोलाइन्थ्यो तब तिमीले इन्कार गर्दथ्यौ ।

قَالُوْا رَبَّنَآ اَمَتَّنَا اثْنَتَيْنِ وَاَحْيَيْتَنَا اثْنَتَيْنِ فَاعْتَرَفْنَا بِذُنُوْبِنَا فَهَلْ اِلٰى خُرُوْجٍ مِّنْ سَبِيْلٍ ۝١١

११) उनीहरूले भन्नेछन्: कि ''हे हाम्रो पालनकर्ता ! तिमीले हामीलाई दुई पटक मृत बनायौ र दुईपटक जीवित गऱ्यौ । अब हामीले आफ्ना गुनाह (अपराधहरू) स्वीकार गऱ्यौं, त के अब कुनै निस्कने मार्ग पनि छ ?''

ذٰلِكُمْ بِاَنَّهٗٓ اِذَا دُعِيَ اللّٰهُ وَحْدَهٗ كَفَرْتُمْ ۚ وَاِنْ يُّشْرَكْ بِهٖ تُؤْمِنُوْا ۭ فَالْحُكْمُ لِلّٰهِ الْعَلِيِّ الْكَبِيْرِ ۝١٢

१२) यो सजाय (अजाब) तिमीलाई यसकारण छ कि जब एक्लो अल्लाहलाई पुकारिन्थ्यो तब तिमीले इन्कार गर्दथ्यौ । तर यदि ऊसँग अरु साझेदार ठहराइन्थ्यो भने तिमीले मानिहाल्थ्यौ । तसर्थ अब फैसला (निर्णय) अल्लाहकै हो, जो सर्वोच्च र महान् छ ।

هُوَ الَّذِيْ يُرِيْكُمْ اٰيٰتِهٖ وَيُنَزِّلُ لَكُمْ مِّنَ

१३) उही हो जसले तिमीलाई आफ्ना

السَّمَآءِ رِزْقًا ۗ وَمَا يَتَذَكَّرُ إِلَّا مَن يُنِيبُ ﴿١٣﴾

निशानी देखाउँदछ । र तिम्रो निम्ति आकाशबाट जीविका अवतरित गर्दछ, उपदेश त त्यसैले प्राप्त गर्दछ जो (अल्लाह तिर) प्रवृत्त हुन्छ ।

فَادْعُوا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ وَلَوْ كَرِهَ الْكَافِرُونَ ﴿١٤﴾

१४) तिमीले अल्लाहलाई पुकार्दै गर, धर्मलाई उसको निम्ति समर्पित गरेर यदि काफिरहरूले नराम्रो नै मान्दछन् भने पनि ।

رَفِيعُ الدَّرَجَاتِ ذُو الْعَرْشِ يُلْقِي الرُّوحَ مِنْ أَمْرِهِ عَلَىٰ مَن يَشَاءُ مِنْ عِبَادِهِ لِيُنذِرَ يَوْمَ التَّلَاقِ ﴿١٥﴾

१५) सर्वोच्च दर्जावाला"अर्श" को मालिक उसले आफ्ना बन्दाहरूमध्ये, जसलाई चाहन्छ, आफ्नो आदेशले वह्य पठाउँदछ, ताकि साक्षात्कारको दिनबाट डराओस्,

يَوْمَ هُم بَارِزُونَ ۖ لَا يَخْفَىٰ عَلَى اللَّهِ مِنْهُمْ شَيْءٌ ۚ لِّمَنِ الْمُلْكُ الْيَوْمَ ۖ لِلَّهِ الْوَاحِدِ الْقَهَّارِ ﴿١٦﴾

१६) जुनदिन उनीहरू खुल्ला रूपले अगाडि उपस्थित हुनेछन् उनीहरूको कुनै कुरा अल्लाहसित लुकेको हुनेछैन, "आज कसको राज्य छ ?" "अल्लाहको मात्र जो एकलै सबैमाथि शक्ति सम्पन्न छ ।

الْيَوْمَ تُجْزَىٰ كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ ۚ لَا ظُلْمَ الْيَوْمَ ۚ إِنَّ اللَّهَ سَرِيعُ الْحِسَابِ ﴿١٧﴾

१७) आज प्रत्येक व्यक्तिलाई उसको कमाइको प्रतिफल दिइनेछ । आज कुनै अन्याय हुनेछैन । निःसन्देह अल्लाह शीघ्र हिसाब लिनेवाला छ ।

وَأَنذِرْهُمْ يَوْمَ الْآزِفَةِ إِذِ الْقُلُوبُ لَدَى الْحَنَاجِرِ كَاظِمِينَ ۚ مَا لِلظَّالِمِينَ مِنْ حَمِيمٍ وَلَا شَفِيعٍ يُطَاعُ ﴿١٨﴾

१८) र उनीहरूलाई शीघ्र आउने कयामतको दिनबाट सावधान गरिदिनुस्, जबकि चिन्ताले हृदय कण्ठमा आइहाल्नेछ र सबै चुपचाप हुनेछन् । अपराधीहरूको

न कोही घनिष्ट मित्र हुनेछ र न सिफारिश गर्ने मानिस, जसको कुरा मानियोस् ।

يَعْلَمُ خَآئِنَةَ الْأَعْيُنِ وَمَا تُخْفِي الصُّدُورُ ﴿١٩﴾

१९) उसले आँखामा लुकेको धोकेबाजी जान्दछ र जुन (कुराहरू) छातीभित्र लुकेका हुन्छन् (उनलाई पनि)

وَاللَّهُ يَقْضِي بِالْحَقِّ ۖ وَالَّذِينَ يَدْعُونَ مِن
دُونِهِ لَا يَقْضُونَ بِشَيْءٍ ۗ إِنَّ اللَّهَ هُوَ السَّمِيعُ
الْبَصِيرُ ﴿٢٠﴾

२०) र अल्लाहले ठीक-ठीक फैसला गर्नेछ । र उसबाहेक जसलाई यिनीहरूले पुकार्दछन्, उनीहरूले कुनै कुराको पनि फैसला गर्न सक्दैनन् । निःसन्देह अल्लाह सबै सुन्नेवाला (र) देख्नेवाला छ ।

أَوَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ
عَاقِبَةُ الَّذِينَ كَانُوا مِن قَبْلِهِمْ ۚ كَانُوا هُمْ
أَشَدَّ مِنْهُمْ قُوَّةً وَآثَارًا فِي الْأَرْضِ فَأَخَذَهُمُ
اللَّهُ بِذُنُوبِهِمْ وَمَا كَانَ لَهُم مِّنَ اللَّهِ مِن وَاقٍ ﴿٢١﴾

२१) के यिनीहरू धरतीमा घुमफिर गरेनन् ताकि देख्दथे कि ती मानिसहरूको परिणाम कस्तो भयो, जो उनीहरू भन्दा पहिला गुज्रिसकेका छन् ? उनीहरू शक्ति र धरतीमा आफ्ना चिन्हहरूको दृष्टिले यिनीहरूभन्दा बढी थिए, अनि उनीहरूको पापको कारण अल्लाहले उनीहरूलाई समातिहाल्यो । र अल्लाहको सजायबाट उनीहरूलाई बचाउनेवाला कोही थिएन ।

ذَٰلِكَ بِأَنَّهُمْ كَانَت تَّأْتِيهِمْ رُسُلُهُم بِالْبَيِّنَاتِ
فَكَفَرُوا فَأَخَذَهُمُ اللَّهُ ۚ إِنَّهُ قَوِيٌّ شَدِيدُ
الْعِقَابِ ﴿٢٢﴾

२२) यो यसकारण कि उनीहरूका पासमा पैगम्बरहरू चमत्कार लिएर आउँदथे त तिनीहरूले कुफ्र गरे, तसर्थ अल्लाहले उनीहरूलाई समतिहाल्यो । निःसन्देह त्यो सर्वशक्तिमान् (र) भयंकर सजाय दिनेवाला छ ।

२३) र हामीले "मूसा(अ.)लाई" आफ्ना निशानीहरू र स्पष्ट प्रमाण दिएर पठायौं,

وَلَقَدْ أَرْسَلْنَا مُوسَىٰ بِآيَاتِنَا وَسُلْطَانٍ مُّبِينٍ ﴿٢٣﴾

२४) (अर्थात्) "फिरऔन" र "हामान" र "कारूनतिर", तब उनीहरूले भने कि "यो त जादूगर र झूठो हो ।"

إِلَىٰ فِرْعَوْنَ وَهَامَانَ وَقَارُونَ فَقَالُوا سَاحِرٌ كَذَّابٌ ﴿٢٤﴾

२५) अनि जब (मूसा अ.) उनीहरूको सामु हाम्रो तर्फबाट सत्य धर्म लिएर आए तब उनीहरूले भनेः कि यसको साथमा ईमानवालाहरू जति छन्, उनीहरूका छोराहरूलाई मारिहाल र उनीहरूका छोरीहरूलाई जीवित छाडिदेऊ । र इन्कार गर्नेहरूको षडयन्त्र त विचलित हुनलाई मात्र हुन्छ ।

فَلَمَّا جَاءَهُم بِالْحَقِّ مِنْ عِندِنَا قَالُوا اقْتُلُوا أَبْنَاءَ الَّذِينَ آمَنُوا مَعَهُ وَاسْتَحْيُوا نِسَاءَهُمْ ۚ وَمَا كَيْدُ الْكَافِرِينَ إِلَّا فِي ضَلَالٍ ﴿٢٥﴾

२६) र फिरऔनले भन्यो कि मलाई छाडिदेऊ ताकि "मूसा(अ.)लाई" मारिहालूँ र उसले आफ्नो पालनहारलाई (सहायताको निम्ति) पुकारोस् । मलाई भय छ कि उसले तिमीहरूको धर्मलाई परिवर्तित नगरिहालोस् वा उसले देशमा ठूलो दंगा न भड्काई देओस् ।

وَقَالَ فِرْعَوْنُ ذَرُونِي أَقْتُلْ مُوسَىٰ وَلْيَدْعُ رَبَّهُ ۖ إِنِّي أَخَافُ أَن يُبَدِّلَ دِينَكُمْ أَوْ أَن يُظْهِرَ فِي الْأَرْضِ الْفَسَادَ ﴿٢٦﴾

२७) त्यसपछि "मूसा(अ.)ले भनेः कि "मैले हरेक अहंकारीको खराबीबाट, जसले हिसाबको दिनमाथि ईमान राख्दैन आफ्नो र तिम्रो पालनकर्ताको शरण लिइसकेको छु ।

وَقَالَ مُوسَىٰ إِنِّي عُذْتُ بِرَبِّي وَرَبِّكُم مِّن كُلِّ مُتَكَبِّرٍ لَّا يُؤْمِنُ بِيَوْمِ الْحِسَابِ ﴿٢٧﴾

२८) र फिरऔनका नातेदार मध्ये एउटा मोमिन् व्यक्ति जसले आफ्नो ईमान लुकाएर राख्थ्यो भन्नथाल्यो "के तिमीले एउटा मानिसलाई यस कारण मार्न चाहन्छौ, कि उसले भन्छ कि मेरो पालनकर्ता अल्लाह हो, र उसले तिम्रो पासमा तिम्रो पालनकर्ताको तर्फबाट प्रमाणहरू पनि लिएर आएको छ ? र यदि त्यो भूठा छ भने उसको भूठको नोक्सान उसैलाई हुनेछ। र यदि सत्य छ भने जुन सजायको उसले तिमीलाई धम्की दिइराखेको छ, त्यसबाट केही न केही त तिमीमाथि आइपर्नेछ। निश्चय नै अल्लाहले त्यस्तालाई मार्ग देखाउँदैन जो अतिक्रमणकारी र बडो भूठा छन्।

وَقَالَ رَجُلٌ مُّؤْمِنٌ مِّنْ اٰلِ فِرْعَوْنَ يَكْتُمُ اِيْمَانَهٗٓ اَتَقْتُلُوْنَ رَجُلًا اَنْ يَّقُوْلَ رَبِّيَ اللّٰهُ وَقَدْ جَآءَكُمْ بِالْبَيِّنٰتِ مِنْ رَّبِّكُمْ ۭ وَاِنْ يَّكُ كَاذِبًا فَعَلَيْهِ كَذِبُهٗ ۚ وَاِنْ يَّكُ صَادِقًا يُّصِبْكُمْ بَعْضُ الَّذِيْ يَعِدُكُمْ ۭ اِنَّ اللّٰهَ لَا يَهْدِيْ مَنْ هُوَ مُسْرِفٌ كَذَّابٌ ﴿٢٨﴾

२९) हे मेरा जाति बन्धुका मानिसहरू ! आज त तिम्रो सत्ता छ। तिमी यस धरतीमा प्रभावी छौ तर यदि हामीमाथि अल्लाहको यातना आयो भने हाम्रो सहायता कसले गर्नेछ ?" फिरऔनले भन्यो: कि "मैले तिमीलाई त्यही सल्लाह दिइराखेछु जुन म स्वयम् देखिराखेको छु र मैले तिमीलाई ठीक बाटो नै देखाइराखेको छुँ।

يٰقَوْمِ لَكُمُ الْمُلْكُ الْيَوْمَ ظٰهِرِيْنَ فِي الْاَرْضِ ۡ فَمَنْ يَّنْصُرُنَا مِنْۢ بَاْسِ اللّٰهِ اِنْ جَآءَنَا ۭ قَالَ فِرْعَوْنُ مَآ اُرِيْكُمْ اِلَّا مَآ اَرٰى وَمَآ اَهْدِيْكُمْ اِلَّا سَبِيْلَ الرَّشَادِ ﴿٢٩﴾

३०) तब त्यस मोमिनले भन्नथाल्यो कि हे मेरा जाति बन्धुका मानिसहरू ! मलाई तिम्रो बारेमा भय छ कि

وَقَالَ الَّذِيْٓ اٰمَنَ يٰقَوْمِ اِنِّىْٓ اَخَافُ عَلَيْكُمْ مِّثْلَ يَوْمِ الْاَحْزَابِ ﴿٣٠﴾

तिमीमाथि (विनाशको) त्यस्तो दिन नआइहालोस् जस्तो कि अन्य विगत समुदायहरूमाथि आइपरेको थियो ।

مِثْلَ دَاْبِ قَوْمِ نُوْحٍ وَّعَادٍ وَّثَمُوْدَ وَالَّذِيْنَ مِنْۢ بَعْدِهِمْ ۗ وَمَا اللّٰهُ يُرِيْدُ ظُلْمًا لِّلْعِبَادِ ﴿٣١﴾

३१) जस्तो नूहको कौम र "आद" र "समूद" र उनीहरूपछिका समुदायहरूको अवस्था भयो र अल्लाहले त आफ्ना भक्तहरूमाथि अत्याचार गर्न चाहदैन ।

وَيٰقَوْمِ اِنِّيْٓ اَخَافُ عَلَيْكُمْ يَوْمَ التَّنَادِ ﴿٣٢﴾

३२) र हे मेरा जाति बन्धुका मानिसहरू मलाई तिम्रो बारेमा हाँक-पुकारको दिन (क़यामत) को पनि भय छ,

يَوْمَ تُوَلُّوْنَ مُدْبِرِيْنَ ۚ مَا لَكُمْ مِّنَ اللّٰهِ مِنْ عَاصِمٍ ۚ وَمَنْ يُّضْلِلِ اللّٰهُ فَمَا لَهٗ مِنْ هَادٍ ﴿٣٣﴾

३३) जुन दिन तिमी पिठ्यू फर्काएर भाग्नेछौ, तिमीलाई कसैले पनि अल्लाहको (अजाब) बाट बचाउनेवाला हुनेछैन र जसलाई अल्लाहले मार्ग विचलित गर्दछ, त्यसलाई कसैले पनि मार्गदर्शन गर्नेवाला हुनेछैन ।

وَلَقَدْ جَآءَكُمْ يُوْسُفُ مِنْ قَبْلُ بِالْبَيِّنٰتِ فَمَا زِلْتُمْ فِيْ شَكٍّ مِّمَّا جَآءَكُمْ بِهٖ ۗ حَتّٰٓى اِذَا هَلَكَ قُلْتُمْ لَنْ يَّبْعَثَ اللّٰهُ مِنْۢ بَعْدِهٖ رَسُوْلًا ۗ كَذٰلِكَ يُضِلُّ اللّٰهُ مَنْ هُوَ مُسْرِفٌ مُّرْتَابُ ۚ ﴿٣٤﴾

३४) र यस अघि "यूसुफ(अ.)" पनि तिम्रो पासमा प्रमाणहरू लिएर आएका थिए, त्यसमा तिमी सधैं शंकानै गर्दथ्यौ । यहाँसम्म कि जब उनको मृत्यु भइहाल्यो, त तिमीले भन्न लाग्यौ कि अल्लाह उनी पछाडि कुनै (पैगम्बर) संदेष्टा पठाउने छैन । यस्तै प्रकारले अल्लाहले प्रत्येक त्यस व्यक्तिलाई मार्गविचलित गराइदिन्छ जो सीमा उल्लंघन गर्नेवाला (र) शंका गर्नेवाला छ ।

الَّذِينَ يُجَادِلُونَ فِي آيَاتِ اللَّهِ بِغَيْرِ سُلْطَانٍ أَتَاهُمْ ۖ كَبُرَ مَقْتًا عِندَ اللَّهِ وَعِندَ الَّذِينَ آمَنُوا ۚ كَذَٰلِكَ يَطْبَعُ اللَّهُ عَلَىٰ كُلِّ قَلْبِ مُتَكَبِّرٍ جَبَّارٍ ﴿٣٥﴾

३५) जुन मानिसहरूले उनीहरूको पासमा कुनै प्रमाण नआइकन, अल्लाहका आयतहरूमा विवाद गर्दछन्, अल्लाहको नजिक र मोमिनहरूको नजिक त्यो निक्कै अप्रिय कुरो हो। यस्तै प्रकार अल्लाहले हर घमण्डी-अट्टेरीको हृदयमा छाप लगाइदिन्छ।

وَقَالَ فِرْعَوْنُ يَا هَامَانُ ابْنِ لِي صَرْحًا لَّعَلِّي أَبْلُغُ الْأَسْبَابَ ﴿٣٦﴾

३६) फिरऔनले भन्यो: कि हे "हामान मेरो निम्ति एउटा महल बनाऊ ताकि म त्यसमा चढेर ती ढोकाहरूसम्म पुग्न सकूँ।

أَسْبَابَ السَّمَاوَاتِ فَأَطَّلِعَ إِلَىٰ إِلَٰهِ مُوسَىٰ وَإِنِّي لَأَظُنُّهُ كَاذِبًا ۚ وَكَذَٰلِكَ زُيِّنَ لِفِرْعَوْنَ سُوءُ عَمَلِهِ وَصُدَّ عَنِ السَّبِيلِ ۚ وَمَا كَيْدُ فِرْعَوْنَ إِلَّا فِي تَبَابٍ ﴿٣٧﴾

३७) जुन ढोकाहरू आकाशमा छन् अनि मूसाको अल्लाहलाई देखिहालूँ र म त उसलाई झूठा नै सम्झन्छु। र यस्तै प्रकारले फिरऔनका नराम्रा कर्महरू उसलाई राम्रा लाग्दथे र उसलाई मार्गबाट रोकिइहालिएको थियो र फिरऔनको चालवाजी व्यर्थमा गयो।

وَقَالَ الَّذِي آمَنَ يَا قَوْمِ اتَّبِعُونِ أَهْدِكُمْ سَبِيلَ الرَّشَادِ ﴿٣٨﴾

३८) र त्यस ईमानदार व्यक्तिले भन्यो: कि हे मेरा जातिबन्धुका मानिसहरू! तिमीहरू मेरो अनुशरण गर। म तिम्रो भलाईको ठीक बाटो देखाउने छु।

يَا قَوْمِ إِنَّمَا هَٰذِهِ الْحَيَاةُ الدُّنْيَا مَتَاعٌ وَإِنَّ الْآخِرَةَ هِيَ دَارُ الْقَرَارِ ﴿٣٩﴾

३९) हे मेरा कौमका मानिसहरू! यो संसारिक जीवन त मात्र अस्थायी हो। संतुष्टिको साथ स्थायी रूपले बस्ने घर त आखिरत नै हो।

مَنْ عَمِلَ سَيِّئَةً فَلَا يُجْزٰى اِلَّا مِثْلَهَا ۚ وَمَنْ عَمِلَ صَالِحًا مِّنْ ذَكَرٍ اَوْ اُنْثٰى وَهُوَ مُؤْمِنٌ فَاُولٰٓئِكَ يَدْخُلُوْنَ الْجَنَّةَ يُرْزَقُوْنَ فِيْهَا بِغَيْرِ حِسَابٍ ﴿٤٠﴾

४०) जसले नराम्रो कर्म (गुनाह) गर्नेछ, त्यसको प्रतिफल पनि उसले त्यस्तै पाइनेछ र जसले असल काम गरेको छ, ऊ चाहे पुरुष होस् वा स्त्री र त्यो ईमानवाला छ, त यस्ता मानिसहरू बहिश्त(स्वर्ग) मा प्रवेश पाउने छन्, र त्यहाँ उनीहरूलाई असीमित जीविका प्राप्त हुनेछ ।

وَيٰقَوْمِ مَا لِيْٓ اَدْعُوْكُمْ اِلَى النَّجٰوةِ وَتَدْعُوْنَنِيْٓ اِلَى النَّارِ ﴿٤١﴾

४१) हे मेरो समुदाय ! यो कस्तो कुरा छ कि मैले तिमीलाई मुक्तितिर बोलाइरहेछु, र तिमीले मलाई नर्कतिर बोलाइरहेका छौ ।

تَدْعُوْنَنِيْ لِاَكْفُرَ بِاللّٰهِ وَاُشْرِكَ بِهٖ مَا لَيْسَ لِيْ بِهٖ عِلْمٌ ۫ وَّاَنَا اَدْعُوْكُمْ اِلَى الْعَزِيْزِ الْغَفَّارِ ﴿٤٢﴾

४२) तिमीले मलाई यो आमन्त्रण गर्दैछौ कि म अल्लाहसित कुफ्र गरूँ, र उसको साझेदार ठहराऊँ, जसको बारेमा मलाई केही पनि ज्ञान छैन, र मैले तिमीलाई (अल्लाह) सर्वशक्तिशाली क्षमादातातिर बोलाइराखेको छु ।

لَا جَرَمَ اَنَّمَا تَدْعُوْنَنِيْٓ اِلَيْهِ لَيْسَ لَهٗ دَعْوَةٌ فِي الدُّنْيَا وَلَا فِي الْاٰخِرَةِ وَاَنَّ مَرَدَّنَآ اِلَى اللّٰهِ وَاَنَّ الْمُسْرِفِيْنَ هُمْ اَصْحٰبُ النَّارِ ﴿٤٣﴾

४३) सत्य त यो हो कि जुन कुरातिर तिमीले मलाई बोलाउँछौ, त्यो न संसारमा आमन्त्रण (पुकार्ने) योग्य छ र न आखिरतमा, र यो कि हामीलाई फर्कनु पनि अल्लाहतिरै छ र यो कि जो अतिक्रमणकारी छन्, तीनै नर्कबासी हुन् ।

فَسَتَذْكُرُوْنَ مَآ اَقُوْلُ لَكُمْ ۭ وَاُفَوِّضُ اَمْرِيْٓ اِلَى اللّٰهِ ۭ اِنَّ اللّٰهَ بَصِيْرٌۢ بِالْعِبَادِ ﴿٤٤﴾

४४) अतः जे-जति मैले तिमीलाई भनि राखेको छु, शीघ्र नै तिमीले याद गर्नेछौ । म त आफ्नो कुरो अल्लाहलाई सुम्पन्छु । निःसन्देह

अल्लाह आफ्ना भक्तहरूलाई देखनेवाला हो ।

فَوَقٰىهُ اللّٰهُ سَيِّاٰتِ مَا مَكَرُوْا وَحَاقَ بِاٰلِ فِرْعَوْنَ سُوْٓءُ الْعَذَابِ ﴿٤٥﴾

४५) यसर्थ अल्लाहले (मूसा अ. लाई) उनीहरूका षडयन्त्रहरूको दोषबाट बचाइहाल्यो र फिरऔनीहरूलाई नराम्रो यातनाले घेरिहाल्यो ।

اَلنَّارُ يُعْرَضُوْنَ عَلَيْهَا غُدُوًّا وَّعَشِيًّا ۚ وَيَوْمَ تَقُوْمُ السَّاعَةُ ۗ اَدْخِلُوْٓا اٰلَ فِرْعَوْنَ اَشَدَّ الْعَذَابِ ﴿٤٦﴾

४६) अर्थात् (नर्क) आगो छ, जसको अगाडि उनीहरू साँझ बिहान, प्रस्तुत गराउदैंछन् र जुन दिन कयामतको समय आउनेछ त्यतिखेर भनिनेछः "फिर्औनका मानिसहरूलाई निकृष्टतम यातनामा प्रविष्ट गराऊ ।"

وَاِذْ يَتَحَآجُّوْنَ فِى النَّارِ فَيَقُوْلُ الضُّعَفٰٓؤُا لِلَّذِيْنَ اسْتَكْبَرُوْٓا اِنَّا كُنَّا لَكُمْ تَبَعًا فَهَلْ اَنْتُمْ مُّغْنُوْنَ عَنَّا نَصِيْبًا مِّنَ النَّارِ ﴿٤٧﴾

४७) र जबकि उनीहरू नर्कमा एक अर्कासित झगडा गरिराखेका हुनेछन् त कमजोरहरूले उनीहरूसित जो ठूला बन्दथे, भन्नेछन् कि "हामी त तिम्रो पछि-पछि हिंड्नेवाला थियौं । अब के तिमीले हामीमाथिबाट यस आगोको केही भाग हटाउन सक्दछौ ?"

قَالَ الَّذِيْنَ اسْتَكْبَرُوْٓا اِنَّا كُلٌّ فِيْهَآ اِنَّ اللّٰهَ قَدْ حَكَمَ بَيْنَ الْعِبَادِ ﴿٤٨﴾

४८) उनीहरू जो ठूला बन्दथे, भन्नेछन्: "हामी त सबै यसैमा छौं । अल्लाहले आफ्ना भक्तहरूमा फैसला गरिसकेको छ" ।

وَقَالَ الَّذِيْنَ فِى النَّارِ لِخَزَنَةِ جَهَنَّمَ ادْعُوْا رَبَّكُمْ يُخَفِّفْ عَنَّا يَوْمًا مِّنَ الْعَذَابِ ﴿٤٩﴾

४९) र सबै नर्कीहरू मिलेर नर्कको सिपाहीसित भन्नेछन् कि: तिमीले नै आफ्नो पालनकर्तासित प्रार्थना गर कि उसले हामी माथिबाट कुनै दिन त यातना केही कम गरिदेओस् ।

| | |
|---|---|
| ५०) उनीहरूले भन्नेछन् के तिम्रो पासमा तिम्रा रसूल(अ.)ले खुल्ला प्रमाण लिएर आउनु भएको थिएन ? तिनीहरूले भन्नेछन्, "किन होइन !" उनीहरूले भन्नेछन् "अनि तिमीहरूले नै पुकार" तर इन्कार गर्नेवालाहरूको प्रार्थना प्रभावहीन र बेअसर हुनेछ । | قَالُوٓا أَوَلَمْ تَكُ تَأْتِيكُمْ رُسُلُكُم بِٱلْبَيِّنَٰتِ ۖ قَالُوا بَلَىٰ ۚ قَالُوا فَٱدْعُوا ۗ وَمَا دُعَٰٓؤُا ٱلْكَٰفِرِينَ إِلَّا فِى ضَلَٰلٍ ﴿٥٠﴾ |
| ५१) निश्चय नै हामीले आफ्ना रसूलहरू र ती मानिसहरू जसले ईमान ल्याए, उनीहरूको सहायता सांसारिक जीवनमा गर्नेछौं र त्यस दिन पनि, जबकि साक्षीहरू उभिनेछन् । | إِنَّا لَنَنصُرُ رُسُلَنَا وَٱلَّذِينَ ءَامَنُوا فِى ٱلْحَيَوٰةِ ٱلدُّنْيَا وَيَوْمَ يَقُومُ ٱلْأَشْهَٰدُ ﴿٥١﴾ |
| ५२) जुन दिन अत्याचारीहरूलाई उनीहरूको बहाना केही पनि लाभ पुऱ्याउने छैन । बरु उनीहरूको लागि त तिरस्कार हुनेछ र उनीहरूको निम्ति नराम्रो घर हुने छ । | يَوْمَ لَا يَنفَعُ ٱلظَّٰلِمِينَ مَعْذِرَتُهُمْ ۖ وَلَهُمُ ٱللَّعْنَةُ وَلَهُمْ سُوٓءُ ٱلدَّارِ ﴿٥٢﴾ |
| ५३) हामीले मूसा(अ.)लाई मार्गदर्शनवाला किताब (तौरात) दियौं र बनी इस्राईललाई त्यस किताबको उत्तराधिकारी बनायौं । | وَلَقَدْ ءَاتَيْنَا مُوسَى ٱلْهُدَىٰ وَأَوْرَثْنَا بَنِىٓ إِسْرَٰٓءِيلَ ٱلْكِتَٰبَ ﴿٥٣﴾ |
| ५४) बुद्धिमानहरूको निम्ति त्यसमा मार्गदर्शन र शिक्षा थियो । | هُدًى وَذِكْرَىٰ لِأُولِى ٱلْأَلْبَٰبِ ﴿٥٤﴾ |
| ५५) अतः हे नबी धैर्य गर, निःसन्देह अल्लाहको वाचा सत्य छ र आफ्नो गुनाहको माफि माँग र साँझ-बिहान आफ्नो पालनकर्ताको प्रशंसाका साथ गुणगान गर्ने गर । | فَٱصْبِرْ إِنَّ وَعْدَ ٱللَّهِ حَقٌّ وَٱسْتَغْفِرْ لِذَنۢبِكَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ بِٱلْعَشِىِّ وَٱلْإِبْكَٰرِ ﴿٥٥﴾ |

إِنَّ الَّذِينَ يُجَادِلُونَ فِيٓ ءَايَٰتِ اللَّهِ بِغَيْرِ سُلْطَٰنٍ أَتَىٰهُمْ ۙ إِن فِي صُدُورِهِمْ إِلَّا كِبْرٌ مَّا هُم بِبَٰلِغِيهِ ۚ فَاسْتَعِذْ بِاللَّهِ ۖ إِنَّهُۥ هُوَ السَّمِيعُ الْبَصِيرُ ﴿٥٦﴾

५६) जुन मानिसहरू आफूसँग आएको बिना कुनै प्रमाणले अल्लाहका आयतहरूको बारेमा झगडा गर्दछन्, उनीहरूका छातीहरूमा विकार बाहेक केही छैन् । उनीहरू त्यहाँ सम्म पुग्नेवाला छैनन् । अतः तिमी अल्लाहको शरणमा जाऊ । निश्चय नै ऊ सबै सुन्दछ र देख्दछ ।

لَخَلْقُ السَّمَٰوَٰتِ وَالْأَرْضِ أَكْبَرُ مِنْ خَلْقِ النَّاسِ وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٥٧﴾

५७) निःसन्देह आकाशहरू र धरतीहरूको सृष्टि गर्नु, मानिसहरूको सृष्टि गर्नुभन्दा धेरै ठूलो काम हो । तर धेरै मानिसले जान्दैनन् ।

وَمَا يَسْتَوِي الْأَعْمَىٰ وَالْبَصِيرُ وَالَّذِينَ ءَامَنُوا وَعَمِلُوا الصَّٰلِحَٰتِ وَلَا الْمُسِيٓءُ ۚ قَلِيلًا مَّا تَتَذَكَّرُونَ ﴿٥٨﴾

५८) अन्धा र आँखा देख्नेहरू बराबर हुँदैनन् र उनीहरू जसले ईमान ल्याए र असल कर्म गरे र जो नराम्रा काम गरे दुवै परस्परमा बराबर हुन सक्दैनन् । तिमीले धेरै विचार गर्दैनौ ।

إِنَّ السَّاعَةَ لَأٓتِيَةٌ لَّا رَيْبَ فِيهَا وَلَٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يُؤْمِنُونَ ﴿٥٩﴾

५९) कयामत त आउनेवाल नै छ, यसमा कुनै शंका छैन । तर अधिकांश मानिसहरूले ईमान ल्याएका छैनन् ।

وَقَالَ رَبُّكُمُ ادْعُونِيٓ أَسْتَجِبْ لَكُمْ ۚ إِنَّ الَّذِينَ يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي سَيَدْخُلُونَ جَهَنَّمَ دَاخِرِينَ ﴿٦٠﴾

६०) र तिम्रो पालनकर्ताको आदेश छ कि “तिमी मसित प्रार्थना गर, म तिम्रो प्रार्थना स्वीकार गर्नेछु । जुन मानिसहरू मेरो उपासनाबाट घमण्डले अहंकार गर्छन्, अति शीघ्र नर्कमा तिरस्कृत भई प्रवेश गर्ने छन् ।

اَللّٰهُ الَّذِىْ جَعَلَ لَكُمُ الَّيْلَ لِتَسْكُنُوْا فِيْهِ وَالنَّهَارَ مُبْصِرًا ۗ اِنَّ اللّٰهَ لَذُوْ فَضْلٍ عَلَى النَّاسِ وَلٰكِنَّ اَكْثَرَ النَّاسِ لَا يَشْكُرُوْنَ ﴿٦١﴾

६१) अल्लाहले नै तिम्रो निम्ति रात बनायो ताकि यसमा विश्राम गर र दिनलाई प्रकाशमान् बनायो । निःसन्देह अल्लाह मानिसहरूको निम्ति बडो उदार अनुग्रहवाला छ, तर धेरै मानिसहरूले कृतज्ञता प्रकट गर्दैनन् ।

ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ خَالِقُ كُلِّ شَىْءٍ ۘ لَآ اِلٰهَ اِلَّا هُوَ ۖ فَاَنّٰى تُؤْفَكُوْنَ ﴿٦٢﴾

६२) यही अल्लाह तिमी सबैको पालनकर्ता हो, प्रत्येक कुराको स्रष्टा हो । उस बाहेक अरु कोही सत्य पूज्य छैन । अनि तिमी कहाँ भौंतारि रहेका छौ ?

كَذٰلِكَ يُؤْفَكُ الَّذِيْنَ كَانُوْا بِاٰيٰتِ اللّٰهِ يَجْحَدُوْنَ ﴿٦٣﴾

६३) यस्तै प्रकारले ती मानिसहरू भौंतारिरहेका थिए जसले अल्लाहका आयतहरूलाई नकार्दथे ।

اَللّٰهُ الَّذِىْ جَعَلَ لَكُمُ الْاَرْضَ قَرَارًا وَّالسَّمَآءَ بِنَآءً وَّصَوَّرَكُمْ فَاَحْسَنَ صُوَرَكُمْ وَرَزَقَكُمْ مِّنَ الطَّيِّبٰتِ ۗ ذٰلِكُمُ اللّٰهُ رَبُّكُمْ ۚ فَتَبٰرَكَ اللّٰهُ رَبُّ الْعٰلَمِيْنَ ﴿٦٤﴾

६४) अल्लाह नै हो, जसले धरतीहरूलाई तिम्रो निम्ति बासको ठाउँ र आकाशलाई छाना बनायो र तिमीलाई रूप दियो र रूपहरू पनि कति राम्रो बनायो र तिमीलाई पाक (पवित्र) कुराहरू खानको निम्ति दियो । यही अल्लाह तिम्रो पालनकर्ता हो । तसर्थ बडा बरकतवाला छ अल्लाह, सम्पूर्ण जगतको पालनकर्ता ।

هُوَ الْحَىُّ لَآ اِلٰهَ اِلَّا هُوَ فَادْعُوْهُ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۗ اَلْحَمْدُ لِلّٰهِ رَبِّ الْعٰلَمِيْنَ ﴿٦٥﴾

६५) त्यो जीवन्त छ, उसबाहेक अरु कोही सत्य पूज्य छैन । अतः तिमीले उसैको उपासना गर्दै उसैलाई पुकार, सम्पूर्ण विशेषता अल्लाहकै लागि छ, जो सम्पूर्ण जगतको पालनकर्ता हो ।

قُلْ إِنِّي نُهِيتُ أَنْ أَعْبُدَ الَّذِينَ تَدْعُونَ مِنْ دُونِ اللَّهِ لَمَّا جَاءَنِيَ الْبَيِّنَاتُ مِنْ رَبِّي وَأُمِرْتُ أَنْ أُسْلِمَ لِرَبِّ الْعَالَمِينَ ﴿٦٦﴾

६६) (हे मोहम्मद !) यिनीहरूसित तपाईं भनिदिनुस् ! कि "मलाई तिनीहरूको उपासनाबाट मनाही गरिएको छ, जसलाई तिमीले अल्लाहबाहेक पुकार्दछौ, यस कारण कि मसँग मेरो पालनकर्ताको तर्फबाट प्रमाण पुगी सकेको छ । मलाई यो आदेश दिइएको छ कि म सम्पूर्ण संसारको पालनकर्ता नजिक नतमस्तक भइहालूँ ।"

هُوَ الَّذِي خَلَقَكُمْ مِنْ تُرَابٍ ثُمَّ مِنْ نُطْفَةٍ ثُمَّ مِنْ عَلَقَةٍ ثُمَّ يُخْرِجُكُمْ طِفْلًا ثُمَّ لِتَبْلُغُوا أَشُدَّكُمْ ثُمَّ لِتَكُونُوا شُيُوخًا ۚ وَمِنْكُمْ مَنْ يُتَوَفَّىٰ مِنْ قَبْلُ ۖ وَلِتَبْلُغُوا أَجَلًا مُسَمًّى وَلَعَلَّكُمْ تَعْقِلُونَ ﴿٦٧﴾

६७) ऊ त्यही हो जसले तिमीलाई माटोबाट फेरि वीर्य (नुत्फा) बाट फेरि रक्तपिण्डबाट सृष्टि गऱ्यो, अनि उसले तिमीलाई एउटा बच्चाको रूपमा निकाल्दछ, अनि (तिमीलाई बढाउँछ) ताकि तिमी आफ्नो परिपक्वतालाई प्राप्त गर, फेरि वृद्धावस्थामा पुग । यद्यपि तिमीहरूमध्ये कोही यसभन्दा पहिला पनि मरीहाल्छन्, (उसले तिमीलाई छोडी दिन्छ) ताकि तिमी निर्धारित आयुसम्म पुग र यो यसकारण गर्दछ कि तिमीले बुझिहाल ।

هُوَ الَّذِي يُحْيِي وَيُمِيتُ ۖ فَإِذَا قَضَىٰ أَمْرًا فَإِنَّمَا يَقُولُ لَهُ كُنْ فَيَكُونُ ﴿٦٨﴾

६८) त्यही हो जसले जीवन र मृत्यु दिन्छ र जब उसले कुनै कामको निर्णय गर्दछ तब त्यसको निम्ति यति भनिदिन्छ कि, "भइहाल", तब त्यो भइहाल्दछ ।

६९) के तिमीले उनीहरूलाई देख्यौ, जसले अल्लाहको आयातमा विवाद गर्दछन् ? यिनीहरू कहाँ भौंतारिराखेका छन् ?

أَلَمْ تَرَ إِلَى الَّذِينَ يُجَادِلُونَ فِي آيَاتِ اللَّهِ أَنَّىٰ يُصْرَفُونَ ﴿٦٩﴾

७०) जुन मानिसहरूले किताबलाई झूठा भने र त्यसलाई पनि जुन कि हामीले रसूलहरूलाई दिएर पठाएका थियौं । त शीघ्र नै उनीहरूलाई वास्तविकता थाहा भइहाल्नेछ ।

الَّذِينَ كَذَّبُوا بِالْكِتَابِ وَبِمَا أَرْسَلْنَا بِهِ رُسُلَنَا ۖ فَسَوْفَ يَعْلَمُونَ ﴿٧٠﴾

७१) जबकि तौक (पट्टा) उनीहरूको घाँटीमा हुनेछ र जंजीरहरूमा घिसारिनेछन् ।

إِذِ الْأَغْلَالُ فِي أَعْنَاقِهِمْ وَالسَّلَاسِلُ يُسْحَبُونَ ﴿٧١﴾

७२) उम्लिराखेको पानीमा, अनि नर्कको आगोमा जलाइने छन् ।

فِي الْحَمِيمِ ثُمَّ فِي النَّارِ يُسْجَرُونَ ﴿٧٢﴾

७३) त्यसपछि उनीसित भनिनेछः कि "उनीहरू कहाँ छन्, जसलाई तिमीले साझेदार ठहराउँथ्यौ ?"

ثُمَّ قِيلَ لَهُمْ أَيْنَ مَا كُنْتُمْ تُشْرِكُونَ ﴿٧٣﴾

७४) अल्लाह बाहेक उनीहरूले भन्नेछन्: "उनीहरू त हामीबाट बहकी हाले, बरु यसभन्दा अगाडि हामीले कसैलाई पुकार्दैन्थ्यौ ।" यसैप्रकार अल्लाहले इन्कार गर्नेहरूलाई मार्ग विचलित गर्दछ ।

مِنْ دُونِ اللَّهِ ۖ قَالُوا ضَلُّوا عَنَّا بَلْ لَمْ نَكُنْ نَدْعُو مِنْ قَبْلُ شَيْئًا ۚ كَذَٰلِكَ يُضِلُّ اللَّهُ الْكَافِرِينَ ﴿٧٤﴾

७५) "यो बदला हो यस कुराको जसको कारण तिमी धरतीमा नाहक खुशी थियौ र यस कारण कि तिमी घमण्ड गरिराखेका थियौ ।

ذَٰلِكُمْ بِمَا كُنْتُمْ تَفْرَحُونَ فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ وَبِمَا كُنْتُمْ تَمْرَحُونَ ﴿٧٥﴾

७६) अब नर्कका (जहन्नमका) ढोकाहरूमा प्रवेश गरिहाल, सधैं उसैमा रहनेछौ ।"

ادْخُلُوا أَبْوَابَ جَهَنَّمَ خَالِدِينَ فِيهَا ۖ فَبِئْسَ مَثْوَى الْمُتَكَبِّرِينَ ﴿٧٦﴾

घमण्ड गर्नेहरूको लागि कस्तो नराम्रो बासस्थान हो ।

فَاصۡبِرۡ اِنَّ وَعۡدَ اللّٰهِ حَقٌّ ۚ فَاِمَّا نُرِيَنَّكَ بَعۡضَ الَّذِىۡ نَعِدُهُمۡ اَوۡ نَتَوَفَّيَنَّكَ فَاِلَيۡنَا يُرۡجَعُوۡنَ ﴿۷۷﴾

७७) तसर्थ (हे पैगम्बर !) धैर्य गर्नुस्, अल्लाहको वचन एकदम सत्य छ । जुन कुराको हामीले उनीहरूलाई वचन दिइराखेका छौं त्यसबाट यदि केही हामीले तपाईंलाई देखाइहाल्यौं वा तपाईंलाई उठाइहाल्यौं, (हर अवस्थामा) उनीहरूलाई फर्कनु त हामी तिरै छ ।

وَلَقَدۡ اَرۡسَلۡنَا رُسُلًا مِّنۡ قَبۡلِكَ مِنۡهُمۡ مَّنۡ قَصَصۡنَا عَلَيۡكَ وَمِنۡهُمۡ مَّنۡ لَّمۡ نَقۡصُصۡ عَلَيۡكَ ؕ وَمَا كَانَ لِرَسُوۡلٍ اَنۡ يَّاۡتِىَ بِاٰيَةٍ اِلَّا بِاِذۡنِ اللّٰهِ ۚ فَاِذَا جَآءَ اَمۡرُ اللّٰهِ قُضِىَ بِالۡحَقِّ وَخَسِرَ هُنَالِكَ الۡمُبۡطِلُوۡنَ ﴿۷۸﴾

७८) हामीले तपाईं भन्दा अगाडि पनि धेरै संदेष्टाहरू (पैग़म्बरहरू) पठायौं । उनीहरूमध्ये त केहीका वृत्तान्त हामीले तपाईंलाई वर्णन गरिदिएका छौं र केही यस्ता छन् जसका वृत्तान्त त हामीले तपाईंलाई वर्णन गरेका छैनौं र कुनै रसूलको पनि यो सामर्थ्य थिएन कि अल्लाहको आदेश बिना कुनै निशानी ल्याओस् । अनि जब अल्लाहको आदेश आइपुग्नेछ त न्यायपूर्ण निर्णय गरिहालिने छ । यहाँ झूठाहरू घाटामा परिहाल्ने छन् ।''

اَللّٰهُ الَّذِىۡ جَعَلَ لَكُمُ الۡاَنۡعَامَ لِتَرۡكَبُوۡا مِنۡهَا وَمِنۡهَا تَاۡكُلُوۡنَ ﴿۷۹﴾

७९) अल्लाह नै हो जसले तिम्रा निम्ति चौपायाहरू बनायो ताकि उनीहरूमध्ये केहीमाथि तिमीले सवारी गर र उनीहरूमध्ये केहीलाई तिमी खान्छौ पनि ।

८०) र उनीहरूमा तिम्रो निम्ति अरु पनि फाइदाहरू छन् र यसकारण पनि कि तिम्रा हृदयहरूमा लुकेको आवश्यकताहरू, तिनीहरूमाथि सवारी गरेर हासिल गर (चढेर त्यहाँ पुगिहाल) र उनीमाथि तथा डुङ्गाहरूमा तिमी सवार हुन्छौ ।

وَلَكُمْ فِيهَا مَنَافِعُ وَلِتَبْلُغُوا عَلَيْهَا حَاجَةً فِي صُدُورِكُمْ وَعَلَيْهَا وَعَلَى الْفُلْكِ تُحْمَلُونَ ٨٠

८१) अल्लाहले तिमीलाई आफ्नो निशानीहरू देखाउँदै गएछ । त तिमी अल्लाहका कुन-कुन निशानीहरूलाई मान्ने छैनौ ?

وَيُرِيكُمْ آيَاتِهِ فَأَيَّ آيَاتِ اللَّهِ تُنْكِرُونَ ٨١

८२) के यी मानिसहरूले धरतीमा भ्रमण गरेर आफूभन्दा पहिलाका मानिसहरूको परिणाम देखेनन् । जो यिनीहरूभन्दा संख्यामा धेरै र बढी शक्तिवान् थिए र धरतीमा छोडिएको निशानीहरूको दृष्टिले पनि बढी थिए । त जे-जति उनीहरूले गर्दथे उनको काम लागेनन् ।

أَفَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنْظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِنْ قَبْلِهِمْ ۚ كَانُوا أَكْثَرَ مِنْهُمْ وَأَشَدَّ قُوَّةً وَآثَارًا فِي الْأَرْضِ فَمَا أَغْنَىٰ عَنْهُمْ مَا كَانُوا يَكْسِبُونَ ٨٢

८३) यसर्थ जब उनीहरूको पैगम्बर उनीहरूको पासमा स्पष्ट निशानीहरू लिएर आए त उनीहरूले आफ्नो ज्ञानमाथि घमण्ड गर्न लागे । र आखिर जुन कुराको उनीहरूले उपहास गरेका थिए त्यही कुराले आई घेर्‍यो ।

فَلَمَّا جَاءَتْهُمْ رُسُلُهُمْ بِالْبَيِّنَاتِ فَرِحُوا بِمَا عِنْدَهُمْ مِنَ الْعِلْمِ وَحَاقَ بِهِمْ مَا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ٨٣

८४) अनि उनीहरूले हाम्रा यातना देख्ने बित्तिकै भन्न लागे: "हामीले एक्लै

فَلَمَّا رَأَوْا بَأْسَنَا قَالُوا آمَنَّا بِاللَّهِ وَحْدَهُ وَكَفَرْنَا بِمَا كُنَّا بِهِ مُشْرِكِينَ ٨٤

अल्लाहमाथि ईमान ल्यायौं र तिनीहरूको इन्कार गर्‍यौं जसलाई हामीले उसको साभ्केदार ठहराउँथ्यौं ।

فَلَمْ يَكُ يَنْفَعُهُمْ إِيمَانُهُمْ لَمَّا رَأَوْا بَأْسَنَا ۖ سُنَّتَ اللَّهِ الَّتِي قَدْ خَلَتْ فِي عِبَادِهِ ۖ وَخَسِرَ هُنَالِكَ الْكَافِرُونَ ﴿٨٥﴾

८५) तर हाम्रो सजाय देखी सकेपछि उनीहरूको ईमानले उनीहरूलाई कुनै पनि लाभ पुर्‍याउन सकेन । यही अल्लाहको रीति हो, जुन उसका भक्तहरूमा पहिलेदेखि नै चलिआइरहेको छ र यसबेला इन्कार गर्नेहरू घाटामा परिहाले ।



# सूरतु फुस्सिलत-४१



सूरतु फुस्सिलत मक्की हो, यसमा ५४ आयतहरू र ६ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

१) हामीम्

حٰمٓ ۝١

२) यो अवतरण गरिएको हो बडो कृपालु, अत्यन्त दयावान्को तर्फबाट ।

تَنۡزِيۡلٌ مِّنَ الرَّحۡمٰنِ الرَّحِيۡمِ ۝٢

३) (यस्तो) किताब हो जसका आयातहरू स्पष्ट रूपले वर्णन भएका छन् । अर्थात अरबी भाषामा कुरआन हो । ती मानिसहरूका निम्ति जो जान्दछन् ।

كِتٰبٌ فُصِّلَتۡ اٰيٰتُهٗ قُرۡاٰنًا عَرَبِيًّا لِّقَوۡمٍ يَّعۡلَمُوۡنَ ۝٣

४) जसले खुशीको सन्देश सुनाउँदछ र सचेत पनि गर्दछ । ता पनि उनीहरूमध्ये अधिकांश विमुख भए, र उनीहरू सुन्दैनन् ।

بَشِيۡرًا وَّنَذِيۡرًا ۚ فَاَعۡرَضَ اَكۡثَرُهُمۡ فَهُمۡ لَا يَسۡمَعُوۡنَ ۝٤

५) र उनीहरूले भन्न थाले कि जुन कुरातिर तिमीले हामीलाई आह्वान् गर्दछौ, त्यसका निम्ति त हाम्रा हृदयमा आवरणहरू छन् र हाम्रा कानहरूमा बोझ (भारी) छन् (अर्थात् बहिरापन) र हाम्रो र तिम्रो बीचमा आवरण छ, अतः तिमीले आफ्नो काम गर, हामीले आफ्नो काम गर्दछौं ।

وَقَالُوۡا قُلُوۡبُنَا فِيۡۤ اَكِنَّةٍ مِّمَّا تَدۡعُوۡنَاۤ اِلَيۡهِ وَفِيۡۤ اٰذَانِنَا وَقۡرٌ وَّمِنۡۢ بَيۡنِنَا وَبَيۡنِكَ حِجَابٌ فَاعۡمَلۡ اِنَّنَا عٰمِلُوۡنَ ۝٥

६) भनिदिनुस् “म तिमी जस्तै एउटा

قُلۡ اِنَّمَاۤ اَنَا بَشَرٌ مِّثۡلُكُمۡ يُوۡحٰۤى اِلَىَّ اَنَّمَاۤ اِلٰهُكُمۡ اِلٰهٌ

وَّاحِدٌ فَاسْتَقِيْمُوْٓا اِلَيْهِ وَاسْتَغْفِرُوْهُ ۗ وَوَيْلٌ لِّلْمُشْرِكِيْنَ ۙ﴿٦﴾

मानिस हुँ । मतिर वह्य अवतरण गरिन्छ कि तिम्रो सबैको पूज्य अल्लाह एउटै हो, तसर्थ तिमी सोझै उसैतिर प्रवृत्त होऊ, र उसैसित पापको क्षमायाचना गर र यी मुश्रिकहरूको लागि ठूलो विनाश छ,

الَّذِيْنَ لَا يُؤْتُوْنَ الزَّكٰوةَ وَهُمْ بِالْاٰخِرَةِ هُمْ كٰفِرُوْنَ ﴿٧﴾

७) जसले ज़कात दिँदैनन् र आखिरतबाट पनि इन्कार गर्दछन् ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ﴿٨﴾

८) बिना शंका जसले ईमान ल्याए र राम्रा कर्म गरे, उनीहरूको निम्ति यस्तो पुरस्कार छ जसको क्रम टुट्दैन ।''

قُلْ اَئِنَّكُمْ لَتَكْفُرُوْنَ بِالَّذِيْ خَلَقَ الْاَرْضَ فِيْ يَوْمَيْنِ وَتَجْعَلُوْنَ لَهٗٓ اَنْدَادًا ۗ ذٰلِكَ رَبُّ الْعٰلَمِيْنَ ۚ﴿٩﴾

९) भनिदिनुस् कि: के ''तिमीले उसलाई नकारिराखेका छौ र उसको साझेदार ठहराउँछौ जसले धरतीलाई दुई दिनमा सृष्टि गऱ्यो ऊ त सम्पूर्ण जगतको पालनकर्ता हो ।

وَجَعَلَ فِيْهَا رَوَاسِيَ مِنْ فَوْقِهَا وَبٰرَكَ فِيْهَا وَقَدَّرَ فِيْهَآ اَقْوَاتَهَا فِيْٓ اَرْبَعَةِ اَيَّامٍ ۗ سَوَآءً لِّلسَّآئِلِيْنَ ﴿١٠﴾

१०) र उसले धरतीमा त्यसमाथि पहाड़ बनायो र धरतीमा बरकत (खानेकुरा) राख्यो र त्यसमा बस्नेहरूको लागि जीविकाको सामाग्री निश्चित गऱ्यो । यो सबै चार दिनमा सम्पन्न भयो, प्रश्नगर्नेहरूको निम्ति समान रूपले ।

ثُمَّ اسْتَوٰٓى اِلَى السَّمَآءِ وَهِيَ دُخَانٌ فَقَالَ لَهَا وَلِلْاَرْضِ ائْتِيَا طَوْعًا اَوْ كَرْهًا ۗ قَالَتَآ اَتَيْنَا طَآئِعِيْنَ ﴿١١﴾

११) अनि ऊ आकाशतिर उच्च भयो, त्यो धुवाँ थियो त उसले त्यससित र धरतीलाई आदेश दियो, कि दुवै आऊ (चाहे) खुशीले चाहे नाखुशीले ।

त उनीहरूले भने, कि हामी प्रसन्नतापूर्वक उपस्थित छौं।

१२) त्यस पश्चात दुई दिनमा सातवटा आकाशहरू बनायो र प्रत्येक आकाशमा त्यसको (काम) को आदेश पठायो, र हामीले संसारीय आकाशलाई दीपहरूले (ताराहरू) सिँगार्‍यौं, तथा सुरक्षाको उद्देश्यले पनि, यो सर्वशक्ति सम्पन्न (र) सर्वज्ञले निर्धारित गरिएका उपाय हुन् ।

فَقَضٰىهُنَّ سَبْعَ سَمٰوَاتٍ فِيْ يَوْمَيْنِ وَاَوْحٰى فِيْ كُلِّ سَمَآءٍ اَمْرَهَا وَزَيَّنَّا السَّمَآءَ الدُّنْيَا بِمَصَابِيْحَ وَحِفْظًا ذٰلِكَ تَقْدِيْرُ الْعَزِيْزِ الْعَلِيْمِ ﴿١٢﴾

१३) अब पनि यदि उनीहरूले ध्यान दिदैंनन् भने भनिदिनुस् ! कि म तिमीलाई त्यस्तै प्रकारको चट्याङ्गबाट (आकाशेय यातना) डराउँछु जस्तो चट्याङ्ग ''आद'' र ''समूद'' माथि आएको थियो ।''

فَاِنْ اَعْرَضُوْا فَقُلْ اَنْذَرْتُكُمْ صٰعِقَةً مِّثْلَ صٰعِقَةِ عَادٍ وَّثَمُوْدَ ﴿١٣﴾

१४) जब उनीतिर अघि र पछिबाट संदेष्टाहरू आए कि तिमीले अल्लाहबाहेक कसैको पूजा नगर, तब उनीहरूले भन्न थाले कि यदि हाम्रो पालनकर्ताले चाहेको भए, फरिश्ताहरूलाई (स्वर्गदूत) अवतरित गर्दथ्यो, तसर्थ जुन कुरा तिमीलाई दिइएर पठाइयो, हामीले त्यसलाई मान्दैनौं ।

اِذْ جَآءَتْهُمُ الرُّسُلُ مِنْۢ بَيْنِ اَيْدِيْهِمْ وَمِنْ خَلْفِهِمْ اَلَّا تَعْبُدُوْٓا اِلَّا اللّٰهَ قَالُوْا لَوْ شَآءَ رَبُّنَا لَاَنْزَلَ مَلٰٓئِكَةً فَاِنَّا بِمَآ اُرْسِلْتُمْ بِهٖ كٰفِرُوْنَ ﴿١٤﴾

१५) जो आद थिए, उनीहरू व्यर्थमा धरतीमा घमण्ड गर्न थाले र भने हामीभन्दा बढी शक्तिमा को छ ?'' के उनीहरूले यो देखेनन् कि अल्लाह,

فَاَمَّا عَادٌ فَاسْتَكْبَرُوْا فِى الْاَرْضِ بِغَيْرِ الْحَقِّ وَقَالُوْا مَنْ اَشَدُّ مِنَّا قُوَّةً ۭ اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَهُمْ هُوَ اَشَدُّ مِنْهُمْ قُوَّةً ۭ وَكَانُوْا بِاٰيٰتِنَا يَجْحَدُوْنَ ﴿١٥﴾

जसले उनीहरूलाई सृष्टि गऱ्यो, ऊ उनीहरूभन्दा शक्तिमा बहुत धेरै छ र उनीहरूले हाम्रा आयतहरूलाई नकारिराखे ।

१६) तब हामीले अशुभ दिनहरूमा उनीहरूमाथि शक्तिशाली हावा (हुरी) चलायौं, ताकि उनीहरूलाई सांसारिक जीवनमा अपमान पूर्ण यातनाको स्वाद चखाइदियौं । आख़िरतको यातना त यसभन्दा धेरै अपमान गर्नेवाला छ । (त्यसदिन) उनीहरूले सहायता पाउने छैनन् ।

فَأَرْسَلْنَا عَلَيْهِمْ رِيحًا صَرْصَرًا فِىٓ أَيَّامٍ نَّحِسَاتٍ
لِّنُذِيقَهُمْ عَذَابَ الْخِزْىِ فِى الْحَيٰوةِ الدُّنْيَا ۖ
وَلَعَذَابُ الْاٰخِرَةِ أَخْزٰى ۖ وَهُمْ لَا يُنصَرُونَ ﴿١٦﴾

१७) अब समूद थिए कि उनीहरूलाई पनि हामीले सोझो मार्ग देखाएका थियौं, तर उनीहरूले मार्गदर्शनको सट्टा अन्धा रहनु नै रुचाए । परिणाम स्वरूप उनीहरूले गरेका कामको बदलामा अपमानजनक यातनाको बज्रपातले उनीहरूलाई आइसमात्यो ।

وَأَمَّا ثَمُودُ فَهَدَيْنٰهُمْ فَاسْتَحَبُّوا الْعَمٰى عَلَى الْهُدٰى
فَأَخَذَتْهُمْ صٰعِقَةُ الْعَذَابِ الْهُونِ بِمَا كَانُوا
يَكْسِبُونَ ﴿١٧﴾

१८) तर जसले ईमान ल्याए र संयम गरे उनीहरूलाई हामीले बचाइहाल्यौं ।

وَنَجَّيْنَا الَّذِينَ اٰمَنُوا وَكَانُوا يَتَّقُونَ ﴿١٨﴾

१९) र जुनदिन अल्लाहका शत्रुहरूलाई नर्कतिर लगिनेछ र उनीहरूलाई एकत्रित गरिहालिनेछ,

وَيَوْمَ يُحْشَرُ أَعْدَآءُ اللّٰهِ إِلَى النَّارِ فَهُمْ
يُوزَعُونَ ﴿١٩﴾

२०) यहाँसम्म कि जब एकदम नर्कको नजिक पुग्नेछन्, तब उनीहरूका कान र उनीहरूका आँखा र उनीहरूका छालाहरू उनीहरूका विरुद्ध ती

حَتّٰىٓ إِذَا مَا جَآءُوهَا شَهِدَ عَلَيْهِمْ سَمْعُهُمْ
وَأَبْصٰرُهُمْ وَجُلُودُهُم بِمَا كَانُوا يَعْمَلُونَ ﴿٢٠﴾

कुराका साक्षी हुनेछन्, जुन उनीहरूले गरिराखेका थिए ।

२१) उनीहरूले आफ्ना छालाहरू (अङ्ग) सित भन्नेछन्: कि तिमिले हाम्रो विरोधमा गवाही किन दियौ ! त तिनीहरूले जवाफ दिने छन् कि "जुन अल्लाहले प्रत्येक कुरालाई वाक्यशक्ति प्रदान गरेको छ उसैले हामीलाई पनि बोल्ने शक्ति प्रदान गरेको छ।" र उसैले तिमीलाई पहिलोपटक सृष्टि गरेको थियो र उसै तर्फ तिमीलाई फर्किजानु पर्नेछ ।

وَقَالُوا لِجُلُودِهِمْ لِمَ شَهِدتُّمْ عَلَيْنَا ۖ قَالُوا أَنطَقَنَا اللَّهُ الَّذِي أَنطَقَ كُلَّ شَيْءٍ وَهُوَ خَلَقَكُمْ أَوَّلَ مَرَّةٍ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٢١﴾

२२) र तिमीले यस भयले (आफ्ना नराम्रो कामहरू) लुकाउँदैन्थ्यो कि तिम्रा कान र छालाहरू तिम्रा विरुद्ध गवाही दिनेछन्, बरु तिमीले यो भन्नठान्थ्यौ कि अल्लाहलाई तिम्रा धेरै जसो क्रियाकलापबारे थाहा छैन ।

وَمَا كُنتُمْ تَسْتَتِرُونَ أَن يَشْهَدَ عَلَيْكُمْ سَمْعُكُمْ وَلَا أَبْصَارُكُمْ وَلَا جُلُودُكُمْ وَلَٰكِن ظَنَنتُمْ أَنَّ اللَّهَ لَا يَعْلَمُ كَثِيرًا مِّمَّا تَعْمَلُونَ ﴿٢٢﴾

२३) र यसै अनुमानले, जुन तिमीले आफ्नो पालनकर्ताको बारेमा गर्दथ्यौ, तिमीलाई नष्ट गरिदियो, र अन्ततः तिमी घाटामा पर्नेहरूमध्येका भइहाल्यौ ।

وَذَٰلِكُمْ ظَنُّكُمُ الَّذِي ظَنَنتُم بِرَبِّكُمْ أَرْدَاكُمْ فَأَصْبَحْتُم مِّنَ الْخَاسِرِينَ ﴿٢٣﴾

२४) अब यदि यिनीहरूले संतोष गर्दछन् तैपनि उनीहरूको बास नर्क नै छ र यदि प्रायश्चित गर्नेछन् भने पनि (उनको) प्रायश्चित स्वीकार गरिने छैन ।

فَإِن يَصْبِرُوا فَالنَّارُ مَثْوًى لَّهُمْ ۖ وَإِن يَسْتَعْتِبُوا فَمَا هُم مِّنَ الْمُعْتَبِينَ ﴿٢٤﴾

وَقَيَّضْنَا لَهُمْ قُرَنَاءَ فَزَيَّنُوا لَهُم مَّا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ وَحَقَّ عَلَيْهِمُ الْقَوْلُ فِي أُمَمٍ قَدْ خَلَتْ مِن قَبْلِهِم مِّنَ الْجِنِّ وَالْإِنسِ إِنَّهُمْ كَانُوا خَاسِرِينَ ﴿٢٥﴾

२५) र हामीले (शैतानहरूलाई) उनीहरूका सहभागी नियुक्त गरी दिएका थियौं । अनि उनीहरूले उनीहरूको अगाडि र उनीहरूको पछाडि जे-जति थियो, त्यसलाई आकर्षक बनाई दिएका थिए । अन्ततः उनीहरूमाथि पनि उनीहरू भन्दा पहिला जिन्न र मनुष्यहरूका ती समूहका साथ भए जस्तै अल्लाहको वचन सत्य प्रमाणित भयो । निश्चय नै उनीहरू घाटा व्यहोर्नेवाला भए ।

وَقَالَ الَّذِينَ كَفَرُوا لَا تَسْمَعُوا لِهَٰذَا الْقُرْآنِ وَالْغَوْا فِيهِ لَعَلَّكُمْ تَغْلِبُونَ ﴿٢٦﴾

२६) र काफिरहरूले भने कि यस कुरआनलाई सुन्दै नसुन्नु र (यो पढिने समय) होहल्ला गरिहाल, शायद (त्यसबाट तिमी) प्रभावी रहौ ।

فَلَنُذِيقَنَّ الَّذِينَ كَفَرُوا عَذَابًا شَدِيدًا وَلَنَجْزِيَنَّهُمْ أَسْوَأَ الَّذِي كَانُوا يَعْمَلُونَ ﴿٢٧﴾

२७) तसर्थ निश्चित रूपले हामीले पनि काफिरहरूलाई ठूलो यातनाको स्वाद चखाउनेछौं र तिनीहरूका नराम्रा कर्मको उनीहरूलाई अवश्य सजाय दिनेछौं ।

ذَٰلِكَ جَزَاءُ أَعْدَاءِ اللَّهِ النَّارُ ۖ لَهُمْ فِيهَا دَارُ الْخُلْدِ ۖ جَزَاءً بِمَا كَانُوا بِآيَاتِنَا يَجْحَدُونَ ﴿٢٨﴾

२८) अल्लाहका शत्रुहरूको लागि सजाय यही नर्कको आगो हो । जसमा उनीहरूको निम्ति सधैंको घर छ, यो हाम्रा आयतहरू इन्कार गर्नुको बदला हो ।

وَقَالَ الَّذِينَ كَفَرُوا رَبَّنَا أَرِنَا الَّذَيْنِ أَضَلَّانَا مِنَ الْجِنِّ وَالْإِنسِ نَجْعَلْهُمَا تَحْتَ أَقْدَامِنَا لِيَكُونَا مِنَ الْأَسْفَلِينَ ﴿٢٩﴾

२९) र काफिरहरूले भन्नेछन्: हे हाम्रा पालनकर्ता ! हामीलाई ती जिन्न र मानिसहरूलाई देखाऊ जसले हामीलाई मार्ग विचलित गरेका

थिए, (ताकि) हामीले उनीहरूलाई आफ्ना खुट्टामुनि हालौं ताकि उनीहरू नर्कमा सबभन्दा तल घोर यातनामा रहुन् ।''

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا تَتَنَزَّلُ عَلَيْهِمُ الْمَلَائِكَةُ أَلَّا تَخَافُوا وَلَا تَحْزَنُوا وَأَبْشِرُوا بِالْجَنَّةِ الَّتِي كُنْتُمْ تُوعَدُونَ ﴿٣٠﴾

३०) वास्तवमा जुन मानिसहरूले भने: कि ''हाम्रो पालनकर्ता अल्लाह हो'', अनि उनीहरू (त्यसमा) दृढ रहे, त उनीहरूका निम्ति फरिश्ताहरू (यो भन्दै) अवतरित हुन्छन् कि तिमी निराश र शोकाकुल नहोऊ, अपितु त्यस स्वर्गको शुभसूचना सुनिहाल जसको तिमीलाई वाचा दिइएकोछ ।

نَحْنُ أَوْلِيَاؤُكُمْ فِي الْحَيَاةِ الدُّنْيَا وَفِي الْآخِرَةِ وَلَكُمْ فِيهَا مَا تَشْتَهِي أَنْفُسُكُمْ وَلَكُمْ فِيهَا مَا تَدَّعُونَ ﴿٣١﴾

३१) हामी सांसारिक जीवनमा पनि तिम्रा मित्र थियौं र आखिरतमा पनि (तिम्रा साथमा) रहनेछौं । त्यहाँ जुन कुराको तिमीले इच्छा गर्नेछौ, र जुन कुरा माँग्नेछौं, तिम्रो लागि उपस्थित हुनेछ ।

نُزُلًا مِنْ غَفُورٍ رَحِيمٍ ﴿٣٢﴾

३२) (त्यो) क्षमाशील, र दयावान् अल्लाहको तर्फबाट तिम्रो लागि आतिथ्यको रूपमा हुनेछ ।''

وَمَنْ أَحْسَنُ قَوْلًا مِمَّنْ دَعَا إِلَى اللَّهِ وَعَمِلَ صَالِحًا وَقَالَ إِنَّنِي مِنَ الْمُسْلِمِينَ ﴿٣٣﴾

३३) र यसभन्दा राम्रा कुरावाला को हुनसक्छ जसले अल्लाहतिर डाँक्छ र असल कर्म गर्दछ र भन्दछ: कि ''नि:सन्देह म मुस्लिम हूँ ?''

وَلَا تَسْتَوِي الْحَسَنَةُ وَلَا السَّيِّئَةُ ادْفَعْ بِالَّتِي هِيَ أَحْسَنُ فَإِذَا الَّذِي بَيْنَكَ وَبَيْنَهُ عَدَاوَةٌ كَأَنَّهُ وَلِيٌّ حَمِيمٌ ﴿٣٤﴾

३४) पाप र पुण्य (नेकी र बदी) समान हुन सक्दैन । खराबीलाई भलाईबाट हटाऊ । फेरि तिमीले देख्नेछौ कि

जसको साथ तिम्रो शत्रुता थियो, त्यो घनिष्ट मित्र भइहाल्नेछ ।

३५) र यी कुरा उनीहरूलाई मात्र प्राप्त हुन्छ, जो धैर्य गर्नेवाला छन् र उनीहरूलाई मात्र प्राप्त हुन्छ जो बढो भाग्यमानी छन् ।

وَمَا يُلَقّٰىهَآ اِلَّا الَّذِيْنَ صَبَرُوْا ۚ وَمَا يُلَقّٰىهَآ اِلَّا ذُوْ حَظٍّ عَظِيْمٍ ﴿٣٥﴾

३६) र जब तिमीलाई शैतानको तर्फबाट कुनै नराम्रो विचार आउँछ तब अल्लाहको शरण माँग्ने गर । निःसन्देह ऊ धेरै सुन्ने र जान्नेवाला छ ।

وَاِمَّا يَنْزَغَنَّكَ مِنَ الشَّيْطٰنِ نَزْغٌ فَاسْتَعِذْ بِاللّٰهِ ۗ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٣٦﴾

३७) र रात र दिन, सूर्य र चन्द्र उसको निशानीहरू मध्येका हुन् । तिमीहरूले न सूर्यको पूजा गर नत चन्द्रको, बरु अल्लाहलाई नै ढोग, जसले यी कुराहरूलाई सृष्टि गरेको छ, यदि तिमी उसैको उपासना गर्नेवाला हौ ।

وَمِنْ اٰيٰتِهِ الَّيْلُ وَالنَّهَارُ وَالشَّمْسُ وَالْقَمَرُ ۗ لَا تَسْجُدُوْا لِلشَّمْسِ وَلَا لِلْقَمَرِ وَاسْجُدُوْا لِلّٰهِ الَّذِيْ خَلَقَهُنَّ اِنْ كُنْتُمْ اِيَّاهُ تَعْبُدُوْنَ ﴿٣٧﴾

३८) यदि तैपनि यिनीहरूले घमण्ड गर्दछन् त जो फरिश्ताहरू तिम्रो पालनकर्ताको पासमा छन् उनीहरूले त रात र दिन उसको गुणगान गरिराखेकै छन्, र उनीहरूलाई कहिले दिक्क लाग्दैन ।

فَاِنِ اسْتَكْبَرُوْا فَالَّذِيْنَ عِنْدَ رَبِّكَ يُسَبِّحُوْنَ لَهٗ بِالَّيْلِ وَالنَّهَارِ وَهُمْ لَا يَسْـَٔمُوْنَ ﴿٣٨﴾ السجدة

३९) र यो कुरा पनि उसका निशानीहरूमध्ये हो कि तिमीले देख्छौ कि धरती थिचिएको छ, अनि जब हामी त्यसमा पानी वर्षाउँछौं तब त्यो हराभरा भएर

وَمِنْ اٰيٰتِهٖٓ اَنَّكَ تَرَى الْاَرْضَ خَاشِعَةً فَاِذَآ اَنْزَلْنَا عَلَيْهَا الْمَآءَ اهْتَزَّتْ وَرَبَتْ ۗ اِنَّ الَّذِيْٓ اَحْيَاهَا لَمُحْيِ الْمَوْتٰى ۗ اِنَّهٗ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٣٩﴾

उठ्नथाल्छ। निश्चय नै जसले उसलाई जीवित गऱ्यो मुर्दाहरूलाई जीवित गर्नेवाला छ। निःसन्देह उसलाई हरेक कुराहरूमाथि सामर्थ्य प्राप्त छ।

إِنَّ الَّذِينَ يُلْحِدُونَ فِي آيَاتِنَا لَا يَخْفَوْنَ عَلَيْنَا ۗ
أَفَمَن يُلْقَىٰ فِي النَّارِ خَيْرٌ أَم مَّن يَأْتِي آمِنًا يَوْمَ
الْقِيَامَةِ ۚ اعْمَلُوا مَا شِئْتُمْ ۖ إِنَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٤٠﴾

४०) निःसन्देह जुन मानिसहरूले हाम्रा आयतहरूका बारेमा छलकपटको नीति अपनाउँछन् उनीहरू हामीबाट लुकेका छैनन्। तसर्थ भन त के त्यो व्यक्ति राम्रो छ जुन आगोमा हालिनेछ वा त्यो जो कयामतको दिन निश्चिन्त भएर आउनेछ ? तिमी जे चाहन्छौ गर्दै जाऊ, जे जति तिमीले गरिराखेका छौ उसले सबै देखिराखेकै छ।

إِنَّ الَّذِينَ كَفَرُوا بِالذِّكْرِ لَمَّا جَاءَهُمْ ۖ
وَإِنَّهُ لَكِتَابٌ عَزِيزٌ ﴿٤١﴾

४१) जुन मानिसहरूले आफू कहाँ कुरआन पुगिसकेपछि पनि यसलाई नकारे, (त्यो पनि हामीबाट लुकेको छैन।) यो एउटा अधिपत्यशाली किताब हो।

لَّا يَأْتِيهِ الْبَاطِلُ مِن بَيْنِ يَدَيْهِ وَلَا مِنْ خَلْفِهِ ۖ
تَنزِيلٌ مِّنْ حَكِيمٍ حَمِيدٍ ﴿٤٢﴾

४२) जसको नजिक सम्म असत्य पुग्नै सक्दैन न उसको अगाड़िबाट आउनसक्छ र न उसको पछाडिबाट, (यो) अवतरण हो, उसको तर्फबाट जो अत्यन्त तत्वदर्शी र प्रशंसनीय छ,

مَّا يُقَالُ لَكَ إِلَّا مَا قَدْ قِيلَ لِلرُّسُلِ مِن قَبْلِكَ ۚ
إِنَّ رَبَّكَ لَذُو مَغْفِرَةٍ وَذُو عِقَابٍ أَلِيمٍ ﴿٤٣﴾

४३) तपाईंलाई त्यही मात्र भनिदैछ जुन ती रसूलहरूलाई भनिसकिएको छ, जो तपाईंभन्दा अगाडि गुज्रिसकेका

छन् । निःसन्देह तपाईंको पालनकर्ता बडो क्षमाशील छ र दुःखद सजाय दिनेवाला पनि छ ।

وَلَوْ جَعَلْنٰهُ قُرْاٰنًا اَعْجَمِيًّا لَّقَالُوْا لَوْلَا فُصِّلَتْ اٰيٰتُهٗ ؕ ءَاَعْجَمِيٌّ وَّعَرَبِيٌّ ؕ قُلْ هُوَ لِلَّذِيْنَ اٰمَنُوْا هُدًى وَّشِفَآءٌ ؕ وَالَّذِيْنَ لَا يُؤْمِنُوْنَ فِيْۤ اٰذَانِهِمْ وَقْرٌ وَّهُوَ عَلَيْهِمْ عَمًى ؕ اُولٰٓئِكَ يُنَادَوْنَ مِنْ مَّكَانٍۭ بَعِيْدٍ ﴿٤٤﴾

४४) र यदि हामीले यस कुरआनलाई गैर अरबी भाषामा अवतरित गरेको भए त उनीहरूले भन्थे कि "उसका आयातहरू (हाम्रो भाषामा) स्पष्ट रूपले किन वर्णन गरिएन ? यो अनौठो कुरा हो कि गैर अरबी किताब छ र रसूल(संदेष्टा) अरबी ?" तपाईं भनिदिनुस् कि यो त "ती मानिसहरूको निम्ति जसले ईमान ल्याए, मार्गदर्शन र आरोग्य छ, तर जसले ईमान ल्याएका छैनन् उनका कानहरूमा बहिरोपन र बोझ छ (सुन्दैनन्) र त्यो (कुरआन) उनीहरूका निम्ति अन्धोपन (प्रमाणित भइराखेको) छ, उनीहरू यस्ता छन् जसलाई मानौं कुनै टाढा ठाउँबाट पुकारिदैछ ।"

وَلَقَدْ اٰتَيْنَا مُوْسَى الْكِتٰبَ فَاخْتُلِفَ فِيْهِ ؕ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَّبِّكَ لَقُضِيَ بَيْنَهُمْ ؕ وَاِنَّهُمْ لَفِيْ شَكٍّ مِّنْهُ مُرِيْبٍ ﴿٤٥﴾

४५) हामीले "मूसा(अ.)लाई" किताब दियौं, अनि त्यसमा पनि विवाद गरियो । यदि तपाईंको पालनकर्ताको तर्फबाट अघिदेखि नै निश्चित भइसकेको कुरा नभएको भए उनीहरूको बीचमा अघिनै फैसला गरिहालिन्थ्यो । यिनीहरू त यस (कुरआन) बारे बेचैनीवाला सन्देहमा अल्झिराखेका छन् ।

مَنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهٖ وَمَنْ اَسَآءَ فَعَلَيْهَا ؕ وَمَا رَبُّكَ بِظَلَّامٍ لِّلْعَبِيْدِ ﴿٤٦﴾

४६) जसले असल कर्म गर्नेछ उसले आफ्नो फाइदाका लागि र जसले नराम्रो काम गर्नेछ त त्यसको हानि पनि उसैलाई हुनेछ। तपाईंको पालनकर्ताले भक्तहरूमाथि अत्याचार गर्दैन ।

اِلَيْهِ يُرَدُّ عِلْمُ السَّاعَةِ ؕ وَمَا تَخْرُجُ مِنْ ثَمَرٰتٍ مِّنْ اَكْمَامِهَا وَمَا تَحْمِلُ مِنْ اُنْثٰى وَلَا تَضَعُ اِلَّا بِعِلْمِهٖ ؕ وَيَوْمَ يُنَادِيْهِمْ اَيْنَ شُرَكَآءِىْ ۙ قَالُوْۤا اٰذَنّٰكَ ۙ مَا مِنَّا مِنْ شَهِيْدٍ ﴿٤٧﴾

४७) कयामतको ज्ञान उसैतिर फेरिन्छ ! र जुन फल आफ्ना कोषबाट निस्कन्छन् र जुन महिला गर्भवती हुन्छिन् र जुन बच्चा जन्माउँछिन्, उसलाई यी सबैको ज्ञान हुन्छ । र जुनदिन उसले यी मुश्रिकहरूलाई बोलाएर सोध्ने छ, "कहाँ छन् मेरा साझेदारहरू ?" उनीहरूले भन्नेछन् कि "हामीले त तिमीलाई स्पष्ट रूपले भनिसकेका छौं कि हामी मध्ये कोही पनि यसको साक्षी छैन ।"

وَضَلَّ عَنْهُمْ مَّا كَانُوْا يَدْعُوْنَ مِنْ قَبْلُ وَظَنُّوْا مَا لَهُمْ مِّنْ مَّحِيْصٍ ﴿٤٨﴾

४८) र ज-जसलाई उनीहरूले पूज्ने गर्थे, उनीहरू तिनीहरूको दृष्टिबाट हराइसकेका हुनेछन् । र उनीहरूले बुझिहाल्नेछन् कि उनीहरूको निम्ति कुनै पनि भाग्ने ठाउँ छैन ।

لَا يَسْئَمُ الْاِنْسَانُ مِنْ دُعَآءِ الْخَيْرِ ۫ وَاِنْ مَّسَّهُ الشَّرُّ فَيَئُوْسٌ قَنُوْطٌ ﴿٤٩﴾

४९) मानिस भलाई माँग्नबाट थाक्दैन, तर यदि उसलाई कुनै कष्ट पुग्दछ भने ऊ निराश र उदास भइदिन्छ ।

وَلَئِنْ اَذَقْنٰهُ رَحْمَةً مِّنَّا مِنْ بَعْدِ ضَرَّآءَ مَسَّتْهُ لَيَقُوْلَنَّ هٰذَا لِىْ ۙ وَمَاۤ اَظُنُّ السَّاعَةَ قَآئِمَةً ۙ وَّلَئِنْ رُّجِعْتُ اِلٰى رَبِّىْۤ اِنَّ لِىْ عِنْدَهٗ لَلْحُسْنٰى ۚ

५०) र जुन दुःख उसले भोगी सकेको छ, त्यस पश्चात उसलाई यदि हामीले आफ्नो दयालुताको रसास्वादन

فَلَنُنَبِّئَنَّ الَّذِينَ كَفَرُوا بِمَا عَمِلُوا وَلَنُذِيقَنَّهُم مِّنْ عَذَابٍ غَلِيظٍ ﴿٥٠﴾

गराउँछौं भने उसले निश्चय नै भन्दछ कि "यो त मेरो हक नै हो । म त यो ठान्दिन कि त्यो, कयामत हुनेछ र यदि म आफ्नो रब तिर फर्के तै पनि अवश्य नै उसको पासमा मेरो निम्ति राम्रो पारितोषिक हुनेछ ।'' निश्चय नै हामीले उनीहरूलाई जसले इन्कार गरे अवश्य बताएर नै छाड्छौं, जे-जति उनीहरूले गरेका छन । र हामीले उनीहरूलाई अवश्य नै कठोर यातनाको स्वाद चखाउने छौं ।

وَإِذَا أَنْعَمْنَا عَلَى الْإِنسَانِ أَعْرَضَ وَنَأَىٰ بِجَانِبِهِ وَإِذَا مَسَّهُ الشَّرُّ فَذُو دُعَاءٍ عَرِيضٍ ﴿٥١﴾

५१) जब हामीले मानिसमाथि अनुकम्पा गर्छौं, तब उसले मुख फेरी दिन्छ र टाढिँदै जान्छ । तर जब उसलाई कष्ट पुग्दछ, तब उसले लामो-लामो प्रार्थना गर्न थाल्छ ।

قُلْ أَرَأَيْتُمْ إِن كَانَ مِنْ عِندِ اللَّهِ ثُمَّ كَفَرْتُم بِهِ مَنْ أَضَلُّ مِمَّنْ هُوَ فِي شِقَاقٍ بَعِيدٍ ﴿٥٢﴾

५२) भनिदिनुस् कि तिमीले यो बताऊ, कि यदि यो कुरआन अल्लाहको तर्फबाट आएको छ र तिमीले उसको इन्कार गऱ्यौ भने त्यसभन्दा बढि बहकिएको अरुको हुनेछ, जो विरोधमा धेरै टाढा गइसकेको होस् ?''

سَنُرِيهِمْ آيَاتِنَا فِي الْآفَاقِ وَفِي أَنفُسِهِمْ حَتَّىٰ يَتَبَيَّنَ لَهُمْ أَنَّهُ الْحَقُّ أَوَلَمْ يَكْفِ بِرَبِّكَ أَنَّهُ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٥٣﴾

५३) शीघ्र नै हामीले उनीहरूलाई आफ्ना निशानीहरू दुनियाँमा देखाउने छौं र स्वयम् उनीहरूको आफै भित्र पनि, यहाँसम्म कि उनीहरूलाई

स्पष्ट भइहाल्नेछ कि त्यो (कुरआन) सत्य छ । के तपाईको पालनाकर्ता यस दृष्टिले प्रयाप्त छैन कि त्यो हरेक कुराको जानकार छ ।

५४) यक़ीन जान कि यिनीहरू आफ्नो पालनकर्तासँगको साक्षातकारको बारेमा सन्देहमा परेका छन् । जानीराख, कि अल्लाह हरेक कुरालाई आफ्नो घेरामा लिएको छ ।

أَلَآ إِنَّهُمْ فِى مِرْيَةٍ مِّن لِّقَآءِ رَبِّهِمْ ۗ أَلَآ إِنَّهُۥ بِكُلِّ شَىْءٍ مُّحِيطٌۢ ﴿٥٤﴾



# सूरतुश्शूरा-४२




सूरतुश्शूरा मक्की हो, यसमा ५३ आयतहरू र ५ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

حٰمٓ ۝١

१) हा.मीम,

عٓسٓقٓ ۝٢

२) ऐन्. सीन्. काफ्.

كَذٰلِكَ يُوْحِيْٓ اِلَيْكَ وَاِلَى الَّذِيْنَ مِنْ قَبْلِكَ ۙ اللّٰهُ الْعَزِيْزُ الْحَكِيْمُ ۝٣

३) अधिपत्यशाली र तत्वदर्शी अल्लाह तिमीतिर र तिमी भन्दा पहिलाका मानिसहरूतिर यसै प्रकार वह्य अवतरण गर्दै गरेको छ ।

لَهٗ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۭ وَهُوَ الْعَلِيُّ الْعَظِيْمُ ۝٤

४) आकाशहरू र धरतीमा जे-जति छ उसैको हो र ऊ सर्वोच्च, महिमावान छ ।

تَكَادُ السَّمٰوٰتُ يَتَفَطَّرْنَ مِنْ فَوْقِهِنَّ وَالْمَلٰۗىِٕكَةُ يُسَبِّحُوْنَ بِحَمْدِ رَبِّهِمْ وَيَسْتَغْفِرُوْنَ لِمَنْ فِي الْاَرْضِ ۭ اَلَآ اِنَّ اللّٰهَ هُوَ الْغَفُوْرُ الرَّحِيْمُ ۝٥

५) लाग्छ कि आकाश स्वयं माथिबाट च्यातिहाल्छ । सबै फरिश्ताहरू आफ्नो पालनकर्ताको पवित्रताको प्रंशसामा उसको गुणगान गरिरहन्छन्, र जुन मानिसहरू धरतीमा छन्, उनीहरूका निम्ति क्षमायाचना गरिरहन्छन् । बुझिराख ! कि अल्लाह नै ठूलो क्षमाशील र अत्यन्त दयावान छ ।

وَالَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِهٖٓ اَوْلِيَاۗءَ اللّٰهُ حَفِيْظٌ عَلَيْهِمْ ڮ وَمَآ اَنْتَ عَلَيْهِمْ بِوَكِيْلٍ ۝٦

६) र जुन मानिसहरूले उसको अतिरिक्त अरुलाई आफ्ना अर्को संरक्षक बनाएका छन्, अल्लाहलाई थाहा छ । तपाई माथि तिनीहरूको कुनै जिम्मेवारी छैन ।

وَكَذَٰلِكَ أَوْحَيْنَا إِلَيْكَ قُرْآنًا عَرَبِيًّا لِّتُنذِرَ أُمَّ الْقُرَىٰ وَمَنْ حَوْلَهَا وَتُنذِرَ يَوْمَ الْجَمْعِ لَا رَيْبَ فِيهِ ۚ فَرِيقٌ فِي الْجَنَّةِ وَفَرِيقٌ فِي السَّعِيرِ ﴿٧﴾

७) त्यस्तै प्रकारले हामीले तपाई तिर अरबी कुरआन पठाएका छौं, ताकी तपाईले मक्काका बासिन्दाहरूलाई र यसको वरिपरि बस्नेहरूलाई खबरदार गर्नुस् र उनीहरूलाई कियामतको दिनको बारेमा पनि भय देखाउनुस्, जसमा कुनै शंका छैन । त्यसदिन एउटा समूह स्वर्गमा हुनेछ र एक समूह नर्कमा हुनेछ ।

وَلَوْ شَاءَ اللَّهُ لَجَعَلَهُمْ أُمَّةً وَاحِدَةً وَلَٰكِن يُدْخِلُ مَن يَشَاءُ فِي رَحْمَتِهِ ۚ وَالظَّالِمُونَ مَا لَهُم مِّن وَلِيٍّ وَلَا نَصِيرٍ ﴿٨﴾

८) यदि अल्लाहले चाहेको भए त उनीहरू सबैलाई एउटै समुदायको बनाउँथ्यो, तर उसले जसलाई चाहन्छ आफ्नो दयालुताभित्र प्रवेश गराउँछ । अत्याचारीहरूको, न त कोही मित्र छ न सहायक ।

أَمِ اتَّخَذُوا مِن دُونِهِ أَوْلِيَاءَ ۖ فَاللَّهُ هُوَ الْوَلِيُّ وَهُوَ يُحْيِي الْمَوْتَىٰ وَهُوَ عَلَىٰ كُلِّ شَيْءٍ قَدِيرٌ ﴿٩﴾

९) के उनीहरूले अल्लाह बाहेक अरुलाई आफ्नो संरक्षक बनाएका छन् । संरक्षक त अल्लाह नै हो । र उसैले मृतहरूलाई जीवित गर्ने छ र उसलाई प्रत्येक कुराको सामर्थ्य छ ।

وَمَا اخْتَلَفْتُمْ فِيهِ مِن شَيْءٍ فَحُكْمُهُ إِلَى اللَّهِ ۚ ذَٰلِكُمُ اللَّهُ رَبِّي عَلَيْهِ تَوَكَّلْتُ وَإِلَيْهِ أُنِيبُ ﴿١٠﴾

१०) र जुन कुरामा तिमीले विवाद गरेका छौ त्यसको फैसला अल्लाहको जिम्मामा छ । उही अल्लाह मेरो पालनाकर्ता हो । उसैमाथि मैले भरोसा गरेको छु र उसैतिर म झुक्दछु ।

فَاطِرُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ جَعَلَ لَكُم مِّنْ أَنفُسِكُمْ أَزْوَاجًا وَمِنَ الْأَنْعَامِ أَزْوَاجًا ۖ يَذْرَؤُكُمْ فِيهِ ۚ لَيْسَ كَمِثْلِهِ شَيْءٌ ۖ وَهُوَ السَّمِيعُ الْبَصِيرُ ﴿١١﴾

११) ऊ आकाशहरू र धरतीको स्रष्टा हो । उसले तिम्रो निम्ति तिम्रै सहजातिबाट जोडी बनायो र

चौपायाहरूको जोडी पनि । यस्तै तरिकाले तिमीलाई यहाँ फैलाई रहेको छ । ऊ जस्तो कुनै कुरा छैन, र ऊ सुन्दछ र जान्दछ ।

لَهٗ مَقَالِيْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ يَبْسُطُ الرِّزْقَ لِمَنْ يَّشَآءُ وَيَقْدِرُ ؕ اِنَّهٗ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ﴿۱۲﴾

१२) आकाशहरू र धरतीका साँचोहरू उसैको हातमा छन् । उसले जसको निम्ति चाहन्छ, जीविका फराकिलो पार्दछ र संकुचित गरिदिन्छ । निःसन्देह उसले हरेक कुरो जान्दछ ।

شَرَعَ لَكُمْ مِّنَ الدِّيْنِ مَا وَصّٰى بِهٖ نُوْحًا وَّالَّذِيْٓ اَوْحَيْنَآ اِلَيْكَ وَمَا وَصَّيْنَا بِهٖٓ اِبْرٰهِيْمَ وَمُوْسٰى وَعِيْسٰٓى اَنْ اَقِيْمُوا الدِّيْنَ وَلَا تَتَفَرَّقُوْا فِيْهِ ؕ كَبُرَ عَلَى الْمُشْرِكِيْنَ مَا تَدْعُوْهُمْ اِلَيْهِ ؕ اَللّٰهُ يَجْتَبِيْٓ اِلَيْهِ مَنْ يَّشَآءُ وَيَهْدِيْٓ اِلَيْهِ مَنْ يُّنِيْبُ ﴿۱۳﴾

१३) अल्लाहले तिम्रो निम्ति त्यही दीन (धर्म) निश्चित गऱ्यो, जसलाई अपनाउन नूह(अ.) लाई आदेश गरेको थियो ।" र जसलाई (हे मोहम्मद !) हामीले तपाईतिर वह्यको माध्यमले पठाएका छौं र जसको बारेमा "इब्राहीम(अ.)" र "मूसा(अ.) र", "ईसा (अ.) लाई" पनि आदेश दिएका थियौं, "कि यस दीनलाई कायम राख्नु र उसको विषयमा विभाजित नहुनु ।" जुन कुरोतिर तपाईले बहुदेववादीहरूलाई बोलाउँनु हुन्छ, त्यो त उनीहरूलाई अप्रिय छ । अल्लाहले जसलाई चाहन्छ आफूतिर रोजेर लिन्छ र आफूतिरको मार्ग उसैलाई देखाउँछ जो ऊतिर प्रवृत्त हुन्छ ।

وَمَا تَفَرَّقُوْٓا اِلَّا مِنْ بَعْدِ مَا جَآءَهُمُ الْعِلْمُ بَغْيًا بَيْنَهُمْ ؕ وَلَوْلَا كَلِمَةٌ سَبَقَتْ مِنْ رَّبِّكَ اِلٰٓى اَجَلٍ مُّسَمًّى لَّقُضِيَ بَيْنَهُمْ ؕ وَاِنَّ الَّذِيْنَ اُوْرِثُوا الْكِتٰبَ مِنْ بَعْدِهِمْ لَفِيْ شَكٍّ مِّنْهُ مُرِيْبٍ ﴿۱۴﴾

१४) उनीहरूले त परस्पर एक-एर्कामाथि बढ्ता हुने उद्देश्यले विवाद गरे जबकि उनको पासमा ज्ञान आइसकेको थियो । र यदि तपाईको

पालनकर्ताको तर्फबाट एउटा निश्चित अवधिसम्मको निम्ति समय पहिला निर्धारित नभइसकेको भए, उनीहरूको बीचमा निर्णय गरिदिइनेथियो । तर जुन मानिसहरू उनीहरू पश्चात किताबको उत्तराधिकारी भए, उनीहरू उसको बारेमा शंकमा अल्झिएका छन् ।

فَلِذٰلِكَ فَادْعُ ۚ وَاسْتَقِمْ كَمَآ أُمِرْتَ ۚ وَلَا تَتَّبِعْ أَهْوَآءَهُمْ ۖ وَقُلْ ءَامَنتُ بِمَآ أَنزَلَ ٱللَّهُ مِن كِتٰبٍ ۖ وَأُمِرْتُ لِأَعْدِلَ بَيْنَكُمُ ۖ ٱللَّهُ رَبُّنَا وَرَبُّكُمْ ۖ لَنَآ أَعْمٰلُنَا وَلَكُمْ أَعْمٰلُكُمْ ۖ لَا حُجَّةَ بَيْنَنَا وَبَيْنَكُمُ ۖ ٱللَّهُ يَجْمَعُ بَيْنَنَا ۖ وَإِلَيْهِ ٱلْمَصِيرُ ﴿١٥﴾

१५) तसर्थ (हे मोहम्मद !) उसै तर्फ मानिसहरूलाई बोलाइरहनुस् र जे तपाईलाई आदेश भएको छ, त्यसैमा दृढताका साथ स्थिर रहनुस्, र उनीहरूको इच्छा अनुरूप नहिड्नुस् र भनिदिनुस् कि "जति किताब अल्लाहले अवतरित गर्‍यो, मेरो तिनी माथि ईमान छ र मलाई आदेश छ कि तिमीमा इन्साफ गरूँ । अल्लाह नै हाम्रा र तिम्रा, पालनकर्ता हो । हामीलाई हाम्रा, र तिम्रा कर्महरू तिम्रालागि नै हुन्! हामी र तिमीमा कुनै झै-झगडा छैन । अल्लाहले हामी सबैलाई एकत्रित गर्नेछ, र उसैतिर फर्केर जानुपर्नेछ ।"

وَٱلَّذِينَ يُحَآجُّونَ فِى ٱللَّهِ مِنۢ بَعْدِ مَا ٱسْتُجِيبَ لَهُۥ حُجَّتُهُمْ دَاحِضَةٌ عِندَ رَبِّهِمْ وَعَلَيْهِمْ غَضَبٌ وَلَهُمْ عَذَابٌ شَدِيدٌ ﴿١٦﴾

१६) र जुन मानिसहरूले अल्लाहको कुरामा विवाद उठाउँछन् यस पश्चात जबकि उसलाई (मोमिनहरूले) मानिहालेका छन्, उनीहरूको पालनकर्ता छेउ उनीहरूको झगडा तुच्छ छ, र उनीमाथि प्रकोप छ, र उनीहरूको निम्ति भयङ्कर यातना छ ।

اَللّٰهُ الَّذِیْۤ اَنْزَلَ الْكِتٰبَ بِالْحَقِّ وَالْمِیْزَانَ ؕ وَمَا یُدْرِیْكَ لَعَلَّ السَّاعَةَ قَرِیْبٌ ﴿۱۷﴾

१७) अल्लाहले नै सत्यका साथ किताब अवतरित गऱ्यो र तराजू पनि र तपाईलाई के थाहा कदाचित् क़यामतको समय नजिक आइपुगेको होस् ।

یَسْتَعْجِلُ بِهَا الَّذِیْنَ لَا یُؤْمِنُوْنَ بِهَا ۚ وَالَّذِیْنَ اٰمَنُوْا مُشْفِقُوْنَ مِنْهَا ۙ وَیَعْلَمُوْنَ اَنَّهَا الْحَقُّ ؕ اَلَاۤ اِنَّ الَّذِیْنَ یُمَارُوْنَ فِی السَّاعَةِ لَفِیْ ضَلٰلٍۭ بَعِیْدٍ ﴿۱۸﴾

१८) जुन मानिसहरूले यसमा विश्वास गर्दैनन्, उनीहरूले यसका निम्ति हतार गरिरहेका छन्, र जो मोमिन छन्, उनीहरू यसबाट डर मान्छन् र जान्दछन् कि त्यो सत्य छ । हेर जुन मानिसहरूले कयामतको बारेमा विवाद गर्दैछन् । उनीहरू साञ्है नै मार्ग विचलनमा छन् ।

اَللّٰهُ لَطِیْفٌۢ بِعِبَادِهٖ یَرْزُقُ مَنْ یَّشَآءُ ۚ وَهُوَ الْقَوِیُّ الْعَزِیْزُ ﴿۱۹﴾

१९) अल्लाह आफ्नो बन्दाहरूमाथि धेरै दयावान छ, त्यसले जसलाई चाहन्छ धेरै जीविका प्रदान गर्दछ । र त्यो धेरै शक्तिमान (र) अधिपत्यशाली छ ।

مَنْ كَانَ یُرِیْدُ حَرْثَ الْاٰخِرَةِ نَزِدْ لَهٗ فِیْ حَرْثِهٖ ۚ وَمَنْ كَانَ یُرِیْدُ حَرْثَ الدُّنْیَا نُؤْتِهٖ مِنْهَا ۙ وَمَا لَهٗ فِی الْاٰخِرَةِ مِنْ نَّصِیْبٍ ﴿۲۰﴾

२०) जसको नीयत परलोकको खेतीको छ, हामीले उसको लागि त्यसको खेतीमा वृद्धि प्रदान गर्नेछौं र जसले दुनियाँको खेती चाहन्छ, हामीले त्यसमध्येबाटै उसलाई केही दिइहाल्छौं तर आखिरतमा उसको कुनै भाग हुँदैन ।

اَمْ لَهُمْ شُرَكٰٓؤُا شَرَعُوْا لَهُمْ مِّنَ الدِّیْنِ مَا لَمْ یَاْذَنْۢ بِهِ اللّٰهُ ؕ وَلَوْلَا كَلِمَةُ الْفَصْلِ لَقُضِیَ بَیْنَهُمْ ؕ وَاِنَّ الظّٰلِمِیْنَ لَهُمْ عَذَابٌ اَلِیْمٌ ﴿۲۱﴾

२१) के उनीहरूले यस्तो अल्लाहको साझेदार बनाएका छन् । जसले उनीहरूको लागि यस्तो धर्म निर्धारित गरिदिएका छन्, जसबारे

अल्लाहले आदेश दिएन ? यदि फैसला (को दिन) को वचन नभएको भए, उनीहरूमा फैसला गरिदिइन्थ्यो । निश्चय नै अपराधीहरूको निम्ति दुःखद यातना छ ।

२२) तपाईले हेर्नु हुनेछ कि यी अत्याचारीहरूले आफ्नो कर्मबाट तर्सिराखेका हुनेछन्, जसको दुष्परिणाम उनीहरूमाथि आइपर्नेछ । तर जसले ईमान ल्याए र असल कर्म गरे, उनीहरू स्वर्गका वाटिकाहरूमा हुनेछन्, उनीहरूका निम्ति उनीहरूको पालनकर्ताको पासमा, ती सबै कुरा छन्, जसको कि उनीहहरूले इच्छा गर्नेछन् । यही त बडो उदार अनुग्रह हो ।

تَرَى الظّٰلِمِيْنَ مُشْفِقِيْنَ مِمَّا كَسَبُوْا وَهُوَ وَاقِعٌۢ بِهِمْ ؕ وَالَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فِيْ رَوْضٰتِ الْجَنّٰتِ ۚ لَهُمْ مَّا يَشَآءُوْنَ عِنْدَ رَبِّهِمْ ؕ ذٰلِكَ هُوَ الْفَضْلُ الْكَبِيْرُ ﴿٢٢﴾

२३) त्यही शुभ-सूचना अल्लाहले आफ्ना सेवकहरूलाई दिन्छ । जसले ईमान ल्याए र असल कर्म गरे । भनिदिनुस् कि "म उसको तिमीसित कुनै पारिश्रमिक माग्दिन, मात्र निकटताको प्रेम भाव चाहन्छु । जसले कुनै नेकी गर्दछ, हामीले उसको निम्ति उसको नेकीमा वृद्धि गर्नेछौं । निश्चय नै अल्लाह अत्यन्त क्षमाशील र ठूलो गुणग्राहक हो ।"

ذٰلِكَ الَّذِيْ يُبَشِّرُ اللّٰهُ عِبَادَهُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ ؕ قُلْ لَّآ اَسْئَلُكُمْ عَلَيْهِ اَجْرًا اِلَّا الْمَوَدَّةَ فِي الْقُرْبٰى ؕ وَمَنْ يَّقْتَرِفْ حَسَنَةً نَّزِدْ لَهٗ فِيْهَا حُسْنًا ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ شَكُوْرٌ ﴿٢٣﴾

२४) के यिनीहरूले भन्दछन्: (कि पैगम्बरले) अल्लाहबारे मित्थ्यारोपण गरेको छ ?" यदि अल्लाहले चाहन्छ भने (हे मोहम्मद) तपाईको हृदयमा

اَمْ يَقُوْلُوْنَ افْتَرٰى عَلَى اللّٰهِ كَذِبًا ۚ فَاِنْ يَّشَاِ اللّٰهُ يَخْتِمْ عَلٰى قَلْبِكَ ؕ وَيَمْحُ اللّٰهُ الْبَاطِلَ وَيُحِقُّ الْحَقَّ بِكَلِمٰتِهٖ ؕ اِنَّهٗ عَلِيْمٌۢ بِذَاتِ الصُّدُوْرِ ﴿٢٤﴾

छाप लगाइदिन्छ । र अल्लाहले आफ्नो वाणीबाट असत्यलाई मिटाइराखेको छ, र आफ्नो कुराबाट सत्यलाई प्रमाणित गरेकोछ । निःसन्देह उसले छातीभित्रको कुराहरू पनि जान्दछ ।

وَهُوَ الَّذِىْ يَقْبَلُ التَّوْبَةَ عَنْ عِبَادِهٖ وَيَعْفُوْا عَنِ السَّيِّاٰتِ وَيَعْلَمُ مَا تَفْعَلُوْنَ ﴿٢٥﴾

२५) उही हो जसले आफ्ना सेवकहरूको प्रायश्चित स्वीकार गर्दछ र उनीहरूको पापहरू क्षमा गर्दछ, र तिमीले जे गर्दछौ सबै जान्दछ ।

وَيَسْتَجِيْبُ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَيَزِيْدُهُمْ مِّنْ فَضْلِهٖ ؕ وَالْكٰفِرُوْنَ لَهُمْ عَذَابٌ شَدِيْدٌ ﴿٢٦﴾

२६) ईमानवालाहरू र असल कर्म गर्नेहरूको प्रार्थना सुन्दछ र तिनीहरूलाई आफ्नो उदार अनुग्रहबाट अधिक प्रदान गर्दछ । र जो काफिर छन्, उनीहरूको लागि कडा यातना छ ।

وَلَوْ بَسَطَ اللّٰهُ الرِّزْقَ لِعِبَادِهٖ لَبَغَوْا فِى الْاَرْضِ وَلٰكِنْ يُّنَزِّلُ بِقَدَرٍ مَّا يَشَآءُ ؕ اِنَّهٗ بِعِبَادِهٖ خَبِيْرٌۢ بَصِيْرٌ ﴿٢٧﴾

२७) यदि अल्लाहले आफ्ना सबै सेवकहरूको निम्ति जीविका फराकिलो गरिदिएको भए, उनीहरू धरतीमा उपद्रव गर्न थाल्थे । तर उसले एउटा अनुमानका साथ जे चाहन्छ अवतरित गर्दछ । ऊ आफ्ना सेवकहरूलाई पूर्ण रूपले जान्दछ र देख्दछ ।

وَهُوَ الَّذِىْ يُنَزِّلُ الْغَيْثَ مِنْۢ بَعْدِ مَا قَنَطُوْا وَيَنْشُرُ رَحْمَتَهٗ ؕ وَهُوَ الْوَلِىُّ الْحَمِيْدُ ﴿٢٨﴾

२८) र उही हो जसले मानिसहरू निराश भएपछि, पानी वर्षाउँछ, र आफ्नो दयालुतालाई व्यापक पार्दछ । र उही हो संरक्षक मित्र, प्रशंसनीय ।

وَمِنْ اٰيٰتِهٖ خَلْقُ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَثَّ فِيْهِمَا مِنْ دَآبَّةٍ ؕ وَهُوَ عَلٰى جَمْعِهِمْ اِذَا يَشَآءُ قَدِيْرٌ ﴿٢٩﴾

२९) र उसका निशानीहरूमध्ये आकाशहरू र धरतीको सृष्टि गर्नु, र ती

जीवधारी पनि जुन कि उसले ती दुवैमा फिजाइराखेको छ । र उसले जतिखेर चाहोस् उनीहरूलाई एकत्रित गर्ने सामर्थ्य पनि राख्दछ ।

وَمَآ أَصَابَكُم مِّن مُّصِيبَةٍ فَبِمَا كَسَبَتْ أَيْدِيكُمْ
وَيَعْفُوا۟ عَن كَثِيرٍ ﴿٣٠﴾

३०) र जुन कष्ट पनि तिमीलाई पुग्दछ, त्यो तिम्रो आफ्नै हातको कमाइनै हो र उसले धेरै (पापहरू) माफ गरिदिन्छ ।

وَمَآ أَنتُم بِمُعْجِزِينَ فِى ٱلْأَرْضِ ۖ وَمَا لَكُم مِّن
دُونِ ٱللَّهِ مِن وَلِىٍّ وَلَا نَصِيرٍ ﴿٣١﴾

३१) र तिमीले धरतीमा नियन्त्रणबाट उम्कन सक्तैनौ, र अल्लाह बाहेक तिम्रो न कोही मित्र छ र न सहायक ।

وَمِنْ ءَايَٰتِهِ ٱلْجَوَارِ فِى ٱلْبَحْرِ كَٱلْأَعْلَٰمِ ﴿٣٢﴾

३२) र उसको निशानीहरूमध्ये पहाड जस्तै पानीजहाजहरू पनि हुन् जुन कि समुन्द्रमा चलिराखेका हुन्छन्

إِن يَشَأْ يُسْكِنِ ٱلرِّيحَ فَيَظْلَلْنَ رَوَاكِدَ عَلَىٰ ظَهْرِهِۦٓ ۚ
إِنَّ فِى ذَٰلِكَ لَءَايَٰتٍ لِّكُلِّ صَبَّارٍ شَكُورٍ ﴿٣٣﴾

३३) यदि उसको इच्छा हुन्छ भने उसले हावालाई गतिहीन बनाई दिन्छ । अनि ति जहाजहरू समुन्द्रको पानीमा स्थिर भइहाल्छन् । सबै धैर्यवान र कृतज्ञहरूका लागि यस मा अनेकौं निशानीहरू छन् ।

أَوْ يُوبِقْهُنَّ بِمَا كَسَبُوا۟ وَيَعْفُ عَن كَثِيرٍ ﴿٣٤﴾

३४) वा उनीहरूलाई उनीहरूको कर्मको कारण नष्ट गरिदेओस् र धेरै जसोलाई क्षमा पनि गरिदेओस् ।

وَيَعْلَمَ ٱلَّذِينَ يُجَٰدِلُونَ فِىٓ ءَايَٰتِنَا مَا لَهُم مِّن
مَّحِيصٍ ﴿٣٥﴾

३५) र परिणामतः उनीहरूले जानी राखुन्, जसले हाम्रो आयतहरूमा विवाद गर्दछन् कि उनीहरूको निम्ति कुनै भाग्ने ठाउँ छैन ।

فَمَآ أُوتِيتُم مِّن شَيْءٍ فَمَتَاعُ ٱلْحَيَوٰةِ ٱلدُّنْيَا ۖ وَمَا عِندَ ٱللَّهِ خَيْرٌ وَأَبْقَىٰ لِلَّذِينَ ءَامَنُوا۟ وَعَلَىٰ رَبِّهِمْ يَتَوَكَّلُونَ ﴿٣٦﴾

३६) तिमीलाई जे कुरा दिइएको छ त्यो सांसरिक जीवनको अस्थायी सुख सामग्री हो । तर जे-जति अल्लाहको पासमा छ त्यो धेरै उत्तम छ र स्थाई रहनेवाला पनि, (त्यो) उनीहरूको लागि हो जसले ईमान ल्याए र आफ्नो पालनकर्तामाथि मात्र भरोसा गर्दछन् ।

وَٱلَّذِينَ يَجْتَنِبُونَ كَبَٰٓئِرَ ٱلْإِثْمِ وَٱلْفَوَٰحِشَ وَإِذَا مَا غَضِبُوا۟ هُمْ يَغْفِرُونَ ﴿٣٧﴾

३७) जो ठूला-ठूला गुनाहहरू र निर्लज्जताबाट पन्छिन्छन् र जब उनीहरूलाई रिस उठ्दछ त्यस बेला पनि माफ गरी हाल्छन् ।

وَٱلَّذِينَ ٱسْتَجَابُوا۟ لِرَبِّهِمْ وَأَقَامُوا۟ ٱلصَّلَوٰةَ وَأَمْرُهُمْ شُورَىٰ بَيْنَهُمْ وَمِمَّا رَزَقْنَٰهُمْ يُنفِقُونَ ﴿٣٨﴾

३८) र जसले आफ्नो पालनकर्ताको आदेश मान्दछन् र नमाज पढ्दछन् ? र उनीहरूको प्रत्येक काम आपसी सल्लाहबाट हुन्छन् ? र जे-जति हामीले उनीहरूलाई दिएका छौं त्यसबाट खर्च गर्दछन् ?

وَٱلَّذِينَ إِذَآ أَصَابَهُمُ ٱلْبَغْيُ هُمْ يَنتَصِرُونَ ﴿٣٩﴾

३९) र जब उनीहरूमाथि अन्याय हुन्छ तब उनीहरूले बदला मात्र लिन्छन् ।

وَجَزَٰٓؤُا۟ سَيِّئَةٍ سَيِّئَةٌ مِّثْلُهَا ۖ فَمَنْ عَفَا وَأَصْلَحَ فَأَجْرُهُۥ عَلَى ٱللَّهِ ۚ إِنَّهُۥ لَا يُحِبُّ ٱلظَّٰلِمِينَ ﴿٤٠﴾

४०) र नराम्रोको बदला उसजस्तो नराम्रो हो, तर जसले क्षमा गरिदिन्छ र सुधार गर्दछ त त्यसको पुरस्कार अल्लाहको जिम्मामा छ । निश्चय नै अल्लाहले अत्याचारीहरूलाई रुचाउँदैन ।

وَلَمَنِ ٱنتَصَرَ بَعْدَ ظُلْمِهِۦ فَأُو۟لَٰٓئِكَ مَا عَلَيْهِم مِّن سَبِيلٍ ﴿٤١﴾

४१) र यदि कसैले आफूमाथि भएको अत्याचार पछि बराबरको बदला लिन्छ भने त्यस्ता मानिसहरूमाथि कुनै दोष हुँदैन ।

४२) दोषरोपण त मात्र उनीहरूमाथि हुन्छ जो अरु मानिसहरूमाथि अत्याचार गर्दछन् र धरतीमा नाहक फसाद गर्दछन् । यस्ता मानिसहरूको निम्ति दुःखद यातना छ ।

إِنَّمَا السَّبِيلُ عَلَى الَّذِينَ يَظْلِمُونَ النَّاسَ وَيَبْغُونَ فِي الْأَرْضِ بِغَيْرِ الْحَقِّ ۚ أُولَٰئِكَ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴿٤٢﴾

४३) र जसले संतोष गर्दछ र क्षमा गरि दिन्छ भने यो निश्चित रूपले ठूलो साहसको कामहरू मध्ये हो ।

وَلَمَن صَبَرَ وَغَفَرَ إِنَّ ذَٰلِكَ لَمِنْ عَزْمِ الْأُمُورِ ﴿٤٣﴾

४४) र जुन व्यक्तिलाई अल्लाहले मार्ग विचलित गर्दछ यस पश्चात उसको कोही सहयोगी हुँदैन । र तिमीले अत्याचारीहरूलाई देख्ने छौ कि जब उनीहरूले यातना देख्ने छन् त भन्नेछन् कि "के फिर्ता जाने कुनै मार्ग छ ?"

وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِن وَلِيٍّ مِّن بَعْدِهِ ۗ وَتَرَى الظَّالِمِينَ لَمَّا رَأَوُا الْعَذَابَ يَقُولُونَ هَلْ إِلَىٰ مَرَدٍّ مِّن سَبِيلٍ ﴿٤٤﴾

४५) र तिमीले उनीहरूलाई देख्नेछौ कि तिनीहरू (नर्कको) सामु ल्याइनेछन्, अपमानका कारण थिचिएका हुनेछन् । र छड्के आँखाले हेरिराखेका हुनेछन् । ईमानवालाहरूले त्यसबेला भन्नेछन् कि निश्चय नै वास्तविक हानिमा पर्नेवाला तिनै हुन् जसले कयामतको दिन स्वयं आफूलाई र आफ्ना मानिसहरूलाई घाटामा पारिदिए ।" विश्वास गर ! निश्चय नै अत्याचारीहरू स्थिर रहनेवाला यातनामा छन् ।

وَتَرَاهُمْ يُعْرَضُونَ عَلَيْهَا خَاشِعِينَ مِنَ الذُّلِّ يَنظُرُونَ مِن طَرْفٍ خَفِيٍّ ۗ وَقَالَ الَّذِينَ آمَنُوا إِنَّ الْخَاسِرِينَ الَّذِينَ خَسِرُوا أَنفُسَهُمْ وَأَهْلِيهِمْ يَوْمَ الْقِيَامَةِ ۗ أَلَا إِنَّ الظَّالِمِينَ فِي عَذَابٍ مُّقِيمٍ ﴿٤٥﴾

४६) र अल्लाह बाहेक उनीहरूको कोही मित्र हुने छैन, जसले अल्लाहबाट

وَمَا كَانَ لَهُم مِّنْ أَوْلِيَاءَ يَنصُرُونَهُم مِّن دُونِ اللَّهِ ۗ وَمَن يُضْلِلِ اللَّهُ فَمَا لَهُ مِن سَبِيلٍ ﴿٤٦﴾

अलग उनीहरूको सहायता गर्न सकुन् । र जसलाई अल्लाहले पथ विचलित गरिदिन्छ, उसको लागि कुनै मार्ग हुँदैन ।

४७) आफ्नो पालानकर्ताको आदेश मानी हाल यसभन्दा पहिले कि अल्लाहको तर्फबाट त्यो दिन आओस् जो फर्कदैन । त्यसदिन तिम्रा निम्ति न कुनै शरणस्थल हुनेछ र न तिमीले लुकेर इन्कार गर्न सक्नेछौ ।

اِسْتَجِيْبُوْا لِرَبِّكُمْ مِّنْ قَبْلِ اَنْ يَّاْتِيَ يَوْمٌ لَّا مَرَدَّ لَهٗ مِنَ اللّٰهِ ؕ مَا لَكُمْ مِّنْ مَّلْجَاٍ يَّوْمَئِذٍ وَّمَا لَكُمْ مِّنْ نَّكِيْرٍ ۝٤٧

४८) यदि उनीहरू विमुख हुन्छन् भने हामीले तपाईलाई उनीहरूको निम्ति कुनै संरक्षक बनाएर पठाएका छैनौं । तपाईमाथि त मात्र (सन्देश) पुऱ्याइदिने जिम्मेवारी छ । र जब हामीले मानिसलाई आफ्नो दयालुताको रसास्वादन गराउँछौ त त्यसबाट ऊ मग्न भइहाल्दछ, र यदि उनीहरूलाई उनीहरूकै कर्महरूको कारणले कुनै कष्ट पुग्दछ त निश्चय नै त्यही मानिस बडो कृतघ्न बनिहाल्छन् ।

فَاِنْ اَعْرَضُوْا فَمَاۤ اَرْسَلْنٰكَ عَلَيْهِمْ حَفِيْظًا ؕ اِنْ عَلَيْكَ اِلَّا الْبَلٰغُ ؕ وَاِنَّاۤ اِذَاۤ اَذَقْنَا الْاِنْسَانَ مِنَّا رَحْمَةً فَرِحَ بِهَا ۚ وَاِنْ تُصِبْهُمْ سَيِّئَةٌۢ بِمَا قَدَّمَتْ اَيْدِيْهِمْ فَاِنَّ الْاِنْسَانَ كَفُوْرٌ ۝٤٨

४९) सम्पूर्ण आकाश र पृथ्वीको सत्ता अल्लाह कै लागि हो । उसले जे चाहन्छ सृष्टि गर्दछ, जसलाई चाहन्छ, पुत्रीहरू प्रदान गर्दछ र जसलाई चाहन्छ, छोराहरू प्रदान गर्दछ,

لِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ؕ يَخْلُقُ مَا يَشَآءُ ؕ يَهَبُ لِمَنْ يَّشَآءُ اِنَاثًا وَّيَهَبُ لِمَنْ يَّشَآءُ الذُّكُوْرَ ۝٤٩

५०) वा उनी दुबै छोरा र छोरी प्रदान गर्दछ र जसलाई चाहन्छ, निःसन्तान

اَوْ يُزَوِّجُهُمْ ذُكْرَانًا وَّاِنَاثًا ۚ وَيَجْعَلُ مَنْ يَّشَآءُ عَقِيْمًا ؕ اِنَّهٗ عَلِيْمٌ قَدِيْرٌ ۝٥٠

गरिदिन्छ । निश्चय नै ऊ सर्वज्ञ ठूलो सामर्थ्यवान छ ।

५१) कुनै मानिसलाई सम्भव छैन कि ऊ अल्लाहसित कुरा गरोस्, परन्तु वह्य मार्फत वा पर्दा पछाड़िबाट, वा उसको लागि कुनै फरिश्ता पठाओस्, अनि फरिश्ताले अल्लाहको अज्ञाबाट जे चाहन्छ प्रकाशना गर्दछ । निश्चय नै ऊ सर्वोच्च अत्यन्त तत्वदर्शी छ ।

وَمَا كَانَ لِبَشَرٍ أَنْ يُكَلِّمَهُ اللَّهُ إِلَّا وَحْيًا أَوْ مِنْ وَرَآئِ حِجَابٍ أَوْ يُرْسِلَ رَسُولًا فَيُوحِيَ بِإِذْنِهِ مَا يَشَآءُ ۚ إِنَّهُ عَلِيٌّ حَكِيمٌ ﴿٥١﴾

५२) र यसै प्रकार हामीले आफ्नो आदेशले तपाईतिर रूह (कुरआन) उतारेका छौं । (जबकि) तपाईलाई यस अघि थाहा थिएन कि "किताब" र ईमान के हुन्? तर हामीले त्यस (कुरआन) लाई एउटा प्रकाश बनायौं, जसद्वारा हामीले आफ्ना सेवकहरूमध्ये जसलाई चाहन्छौं मार्ग देखाउँछौं । निश्चय नै तपाईले एउटा सोझो मार्गतिर पथप्रदर्शन गरिराख्नु भएको छ ।

وَكَذَٰلِكَ أَوْحَيْنَآ إِلَيْكَ رُوحًا مِّنْ أَمْرِنَا ۚ مَا كُنتَ تَدْرِي مَا الْكِتَٰبُ وَلَا الْإِيمَٰنُ وَلَٰكِن جَعَلْنَٰهُ نُورًا نَّهْدِي بِهِ مَن نَّشَآءُ مِنْ عِبَادِنَا ۚ وَإِنَّكَ لَتَهْدِيٓ إِلَىٰ صِرَٰطٍ مُّسْتَقِيمٍ ﴿٥٢﴾

५३) उस अल्लाहको मार्गको जो आकाशहरू र धरतीमा सबै कुराको स्वामी हो । सावधान रहनु सबै काम अल्लाहतिरै प्रवृत्त हुनेछन् ।

صِرَٰطِ اللَّهِ الَّذِي لَهُ مَا فِي السَّمَٰوَٰتِ وَمَا فِي الْأَرْضِ ۗ أَلَآ إِلَى اللَّهِ تَصِيرُ الْأُمُورُ ﴿٥٣﴾



## सूरतुज्जुखरुफ-४३




सूरतुज् ज़ुख़रुफ़ मक्की हो, यसमा ८९ आयतहरू र ७ रुकूअ् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

حٰمٓ ۝١

१) हा. मीम,

وَالْكِتٰبِ الْمُبِيْنِ ۝٢

२) स्पष्ट किताबको कसम,

إِنَّا جَعَلْنٰهُ قُرْءٰنًا عَرَبِيًّا لَّعَلَّكُمْ تَعْقِلُوْنَ ۝٣

३) हामीले यसलाई अरबी भाषाको कुरआन बनायौं ताकि तिमीहरू बुझ्न सक ।

وَإِنَّهٗ فِيْٓ أُمِّ الْكِتٰبِ لَدَيْنَا لَعَلِيٌّ حَكِيْمٌ ۝٤

४) र निश्चय नै यो लौहे महफूजमा अङ्कित छ, र हाम्रो पासमा धेरै उच्चकोटिको, तत्वदर्शीताले परिपूर्ण छ ।

أَفَنَضْرِبُ عَنْكُمُ الذِّكْرَ صَفْحًا أَنْ كُنْتُمْ قَوْمًا مُّسْرِفِيْنَ ۝٥

५) के यस कारणले कि तिमी उल्लंघनकारी हौ, हामीले तिमीलाई उपदेश गर्न छाडिदिन्छौं ।

وَكَمْ أَرْسَلْنَا مِنْ نَّبِيٍّ فِي الْأَوَّلِيْنَ ۝٦

६) हामीले पहिलाका मानसिहरूमा पनि कैयन् पैगम्बरहरू पठाएका थियौं ।

وَمَا يَأْتِيْهِمْ مِّنْ نَّبِيٍّ إِلَّا كَانُوْا بِهٖ يَسْتَهْزِءُوْنَ ۝٧

७) जो रसूल उनीहरूको पासमा आए, उनीहरूले उसको उपहास नै गर्दथे ।

فَأَهْلَكْنَآ أَشَدَّ مِنْهُمْ بَطْشًا وَّمَضٰى مَثَلُ الْأَوَّلِيْنَ ۝٨

८) अन्ततः हामीले तिनीहरूलाई समातेर नष्ट गरिदियौं जुन उनीहरूभन्दा धेरै शक्तिशाली थिए र पहिलाका मानिसहरूको उदाहरण गुज्रिसकेको छ ।

९) यदि तपाईले उनीहरूसित सोध्नु हुन्छ कि “आकाशहरू र धरतीलाई कसले सृष्टि गऱ्यो ?” त उनीहरूले अवश्य नै भन्नेछन्: कि “तिनीहरूलाई अत्यन्त अधिपत्यशाली, सर्वज्ञाता (अल्लाह)ले सृष्टि गरेको छ ।”

وَلَئِنْ سَأَلْتَهُمْ مَنْ خَلَقَ السَّمَاوَاتِ وَالْأَرْضَ لَيَقُولُنَّ
خَلَقَهُنَّ الْعَزِيزُ الْعَلِيمُ ﴿٩﴾

१०) उही हो जसले तिम्रो निम्ति धरतीलाई ओछ्यान बनायो र त्यसमा तिम्रो निम्ति मार्गहरू बनायो ताकि तिमीले बाटो पाउन सक ।

الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ مَهْدًا وَجَعَلَ لَكُمْ فِيهَا
سُبُلًا لَعَلَّكُمْ تَهْتَدُونَ ﴿١٠﴾

११) उसैले आकाशबाट एउटा अनुमान अनुसार पानी झाऱ्यो, र हामीले उसद्वारा मृत शहरलाई जीवित पाऱ्यौं । यसै प्रकार तिमीहरू पनि निकालिने छौ ।

وَالَّذِي نَزَّلَ مِنَ السَّمَاءِ مَاءً بِقَدَرٍ فَأَنْشَرْنَا
بِهِ بَلْدَةً مَيْتًا كَذَٰلِكَ تُخْرَجُونَ ﴿١١﴾

१२) जसले विभिन्न कुराहरूका जोडाहरू बनायो र तिम्रो निम्ति ती डुङ्गाहरू र जनावर बनायो जसमाथि तिमी सवारी गर्दछौ ।

وَالَّذِي خَلَقَ الْأَزْوَاجَ كُلَّهَا وَجَعَلَ لَكُمْ مِنَ الْفُلْكِ
وَالْأَنْعَامِ مَا تَرْكَبُونَ ﴿١٢﴾

१३) ताकि तिमी उनीहरूको पिठ्यूमा दृढ भई बस्न सक, अनि यादगर आफ्नो पालनकर्ताको अनुकम्पालाई, जब तिमी उनीहरू माथि राम्रो सँग बसिहाल्छौ र सतुति गर: “महिमावान छ त्यो जसले यसलाई हाम्रो वशमा गरिदियो, अन्यथा हामीले त यसलाई नियन्त्रणमा गर्नसक्ने थिएनौं ।”

لِتَسْتَوُوا عَلَىٰ ظُهُورِهِ ثُمَّ تَذْكُرُوا نِعْمَةَ رَبِّكُمْ إِذَا
اسْتَوَيْتُمْ عَلَيْهِ وَتَقُولُوا سُبْحَانَ الَّذِي سَخَّرَ لَنَا
هَٰذَا وَمَا كُنَّا لَهُ مُقْرِنِينَ ﴿١٣﴾

१४) र निश्चित छ हामी आफ्नो पालनकर्ता तिर फर्केर जानेवाला छौं ।”

وَإِنَّا إِلَىٰ رَبِّنَا لَمُنْقَلِبُونَ ﴿١٤﴾

| | |
|---|---|
| وَجَعَلُوا لَهُ مِنْ عِبَادِهِ جُزْءًا ۚ إِنَّ الْإِنسَانَ لَكَفُورٌ مُّبِينٌ ﴿١٥﴾ | १५) र उनीहरूले उसका दासहरूमध्येबाट केहीलाई उसको अंश (सन्तान) निर्धारित गरे । निश्चय नै मनुष्य खुला रूपमा कृतघ्न छ । |
| أَمِ اتَّخَذَ مِمَّا يَخْلُقُ بَنَاتٍ وَأَصْفَاكُم بِالْبَنِينَ ﴿١٦﴾ | १६) के उसले आफ्नो सृष्टि मध्येबाट आफ्नो निम्ति छोरीहरू रोज्यो, र तिमीलाई छोराहरू प्रदान गऱ्यो । |
| وَإِذَا بُشِّرَ أَحَدُهُم بِمَا ضَرَبَ لِلرَّحْمَٰنِ مَثَلًا ظَلَّ وَجْهُهُ مُسْوَدًّا وَهُوَ كَظِيمٌ ﴿١٧﴾ | १७) जब उनीहरूमध्ये कसैलाई त्यस कुराको सूचना दिइन्छ, जसको उदाहरण उसले अल्लाहको निम्ति वर्णन गरेको छ, तब उसको अनुहार कालो भइहाल्छ र शोक शोकालु भइहाल्छ । |
| أَوَمَن يُنَشَّأُ فِي الْحِلْيَةِ وَهُوَ فِي الْخِصَامِ غَيْرُ مُبِينٍ ﴿١٨﴾ | १८) के (अल्लाहका सन्तान छोरीहरू छन्) जो आभूषणमा पालिन्छ र जसले वादविवाद र झगडामा आफ्ना कुरा स्पष्ट गर्न सक्दैन ? |
| وَجَعَلُوا الْمَلَائِكَةَ الَّذِينَ هُمْ عِبَادُ الرَّحْمَٰنِ إِنَاثًا ۚ أَشَهِدُوا خَلْقَهُمْ ۚ سَتُكْتَبُ شَهَادَتُهُمْ وَيُسْأَلُونَ ﴿١٩﴾ | १९) र उनीहरूले फरिश्ताहरूलाई, जो कि अल्लाहका भक्त हुन्, स्त्री ठानी हाले । के उनीहरूको जन्मेको समयमा यिनी उपस्थित थिए ? उनीहरूको यो गवाही लेखिनेछ र यसकुराबारे उनीहरूसित सोधपूछ गरिनेछ । |
| وَقَالُوا لَوْ شَاءَ الرَّحْمَٰنُ مَا عَبَدْنَاهُم ۗ مَّا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ ۖ إِنْ هُمْ إِلَّا يَخْرُصُونَ ﴿٢٠﴾ | २०) र भन्दछन्: कि "यदि अल्लाहले चाहेको भए, हामीहरूले उनीहरूलाई पूज्दैनथ्यौं ।" उनीहरूलाई यसको केही ज्ञान छैन । उनीहरू त मात्र अटकलबाजी गरिराखेका छन् । |

२१) "के हामीले उनीहरूलाई यसभन्दा अगाडि कुनै किताब दिएका थियौं, जसलाई यिनीहरूले दृढतापूर्वक समातेका छन् ।

أَمْ آتَيْنَاهُمْ كِتَابًا مِّن قَبْلِهِ فَهُم بِهِ مُسْتَمْسِكُونَ ﴿٢١﴾

२२) होइन बरु यिनीहरू त भन्दछन् कि "हामीले आफ्ना बबुबाजेलाई एउटा धर्मको मार्गमा पाएका छौं । र हामी उनैका पदचिन्हमा हिंडिराखेका छौं ।"

بَلْ قَالُوا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّهْتَدُونَ ﴿٢٢﴾

२३) र यसै प्रकार हामी जुनसुकै बस्तीमा यो भन्दा पहिला कुनै सावधान गर्नेवाला पठायौं त त्यहाँका सम्पन्न मानिसहरूले मात्र यहि भने: कि "हामीले आफ्ना बाबुबाजेलाई एउटा धार्मिक मार्गमा पाएका छौं र हामीले उनैका पदचिन्हमा उनीहरूको अनुशरण गर्ने छौं ।"

وَكَذَٰلِكَ مَا أَرْسَلْنَا مِن قَبْلِكَ فِي قَرْيَةٍ مِّن نَّذِيرٍ إِلَّا قَالَ مُتْرَفُوهَا إِنَّا وَجَدْنَا آبَاءَنَا عَلَىٰ أُمَّةٍ وَإِنَّا عَلَىٰ آثَارِهِم مُّقْتَدُونَ ﴿٢٣﴾

२४) (पैगम्बरले) भने पनि कि "के यदि म त्यसभन्दा उत्तम (लक्ष्य सम्म पुग्ने) मार्गदर्शन लिएर आएको छु, जसमा तिमीले आफ्नो बाबुबाजेलाई पाएका छौं तैपनि ? उनीहरूले भन्न थाले: कि "जुन तिमीलाई दिएर पठाइएको छ हामीले त्यसको इन्कारी छौं ।"

قٰلَ أَوَلَوْ جِئْتُكُم بِأَهْدَىٰ مِمَّا وَجَدتُّمْ عَلَيْهِ آبَاءَكُمْ ۖ قَالُوا إِنَّا بِمَا أُرْسِلْتُم بِهِ كَافِرُونَ ﴿٢٤﴾

२५) अनि हामीले उनीसित बदला लियौं । त हेरिहाल कि झूठा भन्नेहरूको परिणाम कस्तो भयो ?

فَانتَقَمْنَا مِنْهُمْ فَانظُرْ كَيْفَ كَانَ عَاقِبَةُ الْمُكَذِّبِينَ ﴿٢٥﴾

२६) जब इब्राहीम(अ.)ले आफ्ना पिता र आफ्नो जातिबन्धु सित भने:

وَإِذْ قَالَ إِبْرَاهِيمُ لِأَبِيهِ وَقَوْمِهِ إِنَّنِي بَرَاءٌ مِّمَّا تَعْبُدُونَ ﴿٢٦﴾

कि "तिमीले जसलाई पूज्दछौ, उनीहरूसित मेरो कुनै सरोकार छैन ?

२७) हो, जसले मलाई सृष्टि गरेको छ, त्यसले मलाई सोझो बाटो पनि देखाउनेछ ।"

إِلَّا الَّذِي فَطَرَنِي فَإِنَّهُ سَيَهْدِينِ ﴿٢٧﴾

२८) र (इब्राहीम अ.) यही कुरा आफ्ना सन्ततिमा छोडेर गए, ताकि उनीहरू शिर्क न गरुन् ।

وَجَعَلَهَا كَلِمَةً بَاقِيَةً فِي عَقِبِهِ لَعَلَّهُمْ يَرْجِعُونَ ﴿٢٨﴾

२९) बरु मैले यिनीहरू र यिनीहरूको पूर्वजलाई साँसारिक जीवनको सुख प्रदान गरिराखें, यहाँसम्म कि उनीहरूको पासमा सत्य र स्पष्ट रूपले व्याख्या गर्ने रसूल आइपुग्यो ।

بَلْ مَتَّعْتُ هَٰؤُلَاءِ وَآبَاءَهُمْ حَتَّىٰ جَاءَهُمُ الْحَقُّ وَرَسُولٌ مُبِينٌ ﴿٢٩﴾

३०) र जब उनीहरूको पासमा सत्य आयो त भन्नथाले: कि "यो त जादू हो । र हामीले यसलाई मान्दैनौं ।"

وَلَمَّا جَاءَهُمُ الْحَقُّ قَالُوا هَٰذَا سِحْرٌ وَإِنَّا بِهِ كَافِرُونَ ﴿٣٠﴾

३१) र भन्न थाले: कि "यो कुरआन यी दुवै बस्तीहरूमध्ये कुनै ठूलो मानिसमाथि किन अवतरित गरिएन ?"

وَقَالُوا لَوْلَا نُزِّلَ هَٰذَا الْقُرْآنُ عَلَىٰ رَجُلٍ مِنَ الْقَرْيَتَيْنِ عَظِيمٍ ﴿٣١﴾

३२) के उनीहरूले तपाईको पालनकर्ताको दयालुतालाई विभाजित गर्दछन् ? सांसारिक जीवनमा उनीहरूको जीवन यापनको साधन हामीले नै उनीहरूको बीचमा बाँडेका छौं, र हामीले उनीहरूमध्ये केही मानिसहरूलाई केही अन्य मानिसहरूभन्दा श्रेणीहरूको दृष्टिले उच्च राखेका छौं, ताकि उनीहरूले एक-अर्काको मातहतमा

أَهُمْ يَقْسِمُونَ رَحْمَتَ رَبِّكَ ۚ نَحْنُ قَسَمْنَا بَيْنَهُمْ مَعِيشَتَهُمْ فِي الْحَيَاةِ الدُّنْيَا ۚ وَرَفَعْنَا بَعْضَهُمْ فَوْقَ بَعْضٍ دَرَجَاتٍ لِيَتَّخِذَ بَعْضُهُمْ بَعْضًا سُخْرِيًّا ۗ وَرَحْمَتُ رَبِّكَ خَيْرٌ مِمَّا يَجْمَعُونَ ﴿٣٢﴾

रहुन् । र तपाईंको पालनकर्ताको दयालुता त्यसभन्दा धेरै उत्तम छ जसलाई उनीहरूले समेटी राखेका छन् ।

وَلَوْلَآ اَنْ يَّكُوْنَ النَّاسُ اُمَّةً وَّاحِدَةً لَّجَعَلْنَا لِمَنْ يَّكْفُرُ بِالرَّحْمٰنِ لِبُيُوْتِهِمْ سُقُفًا مِّنْ فِضَّةٍ وَّمَعَارِجَ عَلَيْهَا يَظْهَرُوْنَ ﴿٣٣﴾

३३) र यदि यस कुराको सम्भावना नभएको भए कि सबै मानिसहरू एउटै समुदाय भइहाल्नेछन्, त जुन मानिसहरूले अल्लाहको इन्कार गर्दछन् हामीले उनीहरूका घरका छतहरू चाँदीको बनाइदिन्थ्यौं र सीढ़ीहरूलाई पनि जसबाट उनीहरू चढ्छन् ।

وَلِبُيُوْتِهِمْ اَبْوَابًا وَّسُرُرًا عَلَيْهَا يَتَّكِـُٔوْنَ ﴿٣٤﴾

३४) र उनीहरूको घरका ढोकाहरू र ती तख्ताहरू पनि जसमाथि उनीहरू ताकिया लगाएर बस्दछन् ।

وَزُخْرُفًا ۗ وَاِنْ كُلُّ ذٰلِكَ لَمَّا مَتَاعُ الْحَيٰوةِ الدُّنْيَا ۗ وَالْاٰخِرَةُ عِنْدَ رَبِّكَ لِلْمُتَّقِيْنَ ﴿٣٥﴾

३५) र सुनद्वारा पनि, यो सब मात्र सांसारिक जीवनको अस्थायी सुख सामग्री हुन् र परलोक त तपाईंको पालनकर्ताकहाँ संयमीहरूको निम्ति हो ।

وَمَنْ يَّعْشُ عَنْ ذِكْرِ الرَّحْمٰنِ نُقَيِّضْ لَهٗ شَيْطٰنًا فَهُوَ لَهٗ قَرِيْنٌ ﴿٣٦﴾

३६) र जुन मानिस अल्लाहको स्मरणबाट आँखा चिम्लन्छ, हामीले उसको निम्ति एउटा शैतान नियुक्त गरिदिन्छौं, अनि उही उसको साथी हुन्छ ।

وَاِنَّهُمْ لَيَصُدُّوْنَهُمْ عَنِ السَّبِيْلِ وَيَحْسَبُوْنَ اَنَّهُمْ مُّهْتَدُوْنَ ﴿٣٧﴾

३७) र यिनिहरूले उनलाई मार्गबाट रोक्छन् र उनीहरूले ठान्दछन् कि सही मार्गमा छन्,

حَتّٰٓى اِذَا جَآءَنَا قَالَ يٰلَيْتَ بَيْنِىْ وَبَيْنَكَ بُعْدَ الْمَشْرِقَيْنِ فَبِئْسَ الْقَرِيْنُ ﴿٣٨﴾

३८) यहाँसम्म कि जब ऊ हाम्रो पासमा आउने छ तब भन्नेछ कि "काश ! तिम्रो र मेरो बीच पूर्व र पश्चिमको दूरी भएको भए ! तिमी धेरै नराम्रो साथी हौ ।"

وَلَنْ يَّنْفَعَكُمُ الْيَوْمَ اِذْ ظَّلَمْتُمْ اَنَّكُمْ فِى الْعَذَابِ مُشْتَرِكُوْنَ ﴿٣٩﴾

३९) र जब तिमी अत्याचारी ठह्रियौ त आज यो कुराले तिमीलाई कुनै लाभ पुऱ्याउन सक्नेछैन कि यातनामा तिमी एक-अर्काको साझेदार हौ ।

اَفَاَنْتَ تُسْمِعُ الصُّمَّ اَوْ تَهْدِى الْعُمْىَ وَمَنْ كَانَ فِىْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٤٠﴾

४०) के तिमीले बहिरालाई सुनाउन सक्दछौ वा अन्धालाई र जो स्पष्ट मार्ग विचलनमा छ, उनलाई बाटो देखाउन सक्दछौ ?

فَاِمَّا نَذْهَبَنَّ بِكَ فَاِنَّا مِنْهُمْ مُّنْتَقِمُوْنَ ﴿٤١﴾

४१) अनि यदि हामीले तिमीलाई यहाँबाट उठाई पनि हाल्यौं तैपनि हामीले उनीसित बदला लिएर नै छाड्नेछौं ।

اَوْ نُرِيَنَّكَ الَّذِىْ وَعَدْنٰهُمْ فَاِنَّا عَلَيْهِمْ مُّقْتَدِرُوْنَ ﴿٤٢﴾

४२) वा हामीले तिमीलाई त्यो चीज देखाउनेछौं । जसको हामीले उनीसित वाचा गरेका छौं । हामीलाई उनीहरूमाथि पूरा सामर्थ्य छ ।

فَاسْتَمْسِكْ بِالَّذِىْٓ اُوْحِىَ اِلَيْكَ ۚ اِنَّكَ عَلٰى صِرَاطٍ مُّسْتَقِيْمٍ ﴿٤٣﴾

४३) जुन वह्य तपाईतिर पठाइएको छ त्यसलाई बलियो गरी समातिराख्नुस् । निश्चय नै तपाई सोझो मार्गमा हुनुहुन्छ ।

وَاِنَّهٗ لَذِكْرٌ لَّكَ وَلِقَوْمِكَ ۚ وَسَوْفَ تُسْـَٔلُوْنَ ﴿٤٤﴾

४४) निश्चय नै त्यो आफैमा तपाईको निम्ति र तिम्रो कौमका लागि उपदेश हो । र शीघ्र नै तिमी सबैसित सोधिनेछ ।

४५) र (हे मोहम्मद !) जुन संदेष्टाहरू हामीले तपाईंभन्दा पहिला पठाएका थियौं उनको बारेमा सोध्नुस् कि के हामीले अल्लाह बाहेक पनि कोही पूजनीय निर्धारित गरेका थियौं, जसको उपासना गरियोस् ?

وَسْـَٔلْ مَنْ اَرْسَلْنَا مِنْ قَبْلِكَ مِنْ رُّسُلِنَآ اَجَعَلْنَا مِنْ دُوْنِ الرَّحْمٰنِ اٰلِهَةً يُّعْبَدُوْنَ ﴿٤٥﴾

४६) र हामीले "मूसा(अ.)लाई" आफ्ना निशानीहरू दिएर "फिरऔन" र उसका दरबारीयाहरू तिर पठायौं, "त (मूसा अ. गएर) भने म समस्त दुनियाँका पालनकर्ताको रसूल हूँ ।"

وَلَقَدْ اَرْسَلْنَا مُوْسٰى بِاٰيٰتِنَآ اِلٰى فِرْعَوْنَ وَمَلَا۟ئِهٖ فَقَالَ اِنِّىْ رَسُوْلُ رَبِّ الْعٰلَمِيْنَ ﴿٤٦﴾

४७) जब उनी तिनीहरूको पासमा हाम्रा निशानीहरू लिएर आए त उनीहरू निशानीहरूको उपहास गर्न थाले ।

فَلَمَّا جَآءَهُمْ بِاٰيٰتِنَآ اِذَا هُمْ مِّنْهَا يَضْحَكُوْنَ ﴿٤٧﴾

४८) र हामीले उनीहरूलाई जुन निशानी पनि देखाउन्थ्यौं, त्यो पहिलो निशानीभन्दा ठूलो हुन्थ्यो, र हामीले उनलाई यातनामा समातिहाल्यौं ताकि तिनीहरू (इन्कारबाट) फर्कुन् ।

وَمَا نُرِيْهِمْ مِّنْ اٰيَةٍ اِلَّا هِىَ اَكْبَرُ مِنْ اُخْتِهَا وَاَخَذْنٰهُمْ بِالْعَذَابِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٤٨﴾

४९) र उनीहरूले भन्न थाले कि "हे जादूगर ! त्यो वचन जुन उसले हाम्रो निम्ति तिमीसित गरेको छ, त्यसको लागि आफ्नो पालनकर्तासित प्रार्थना गर । विश्वास गर हामी सोझो मार्गमा लाग्नेछौं ।"

وَقَالُوْا يٰٓاَيُّهَ السّٰحِرُ ادْعُ لَنَا رَبَّكَ بِمَا عَهِدَ عِنْدَكَ اِنَّنَا لَمُهْتَدُوْنَ ﴿٤٩﴾

५०) अनि जब हामीले उनीहरूबाट त्यो यातना हटाई दियौं त उनीहरूले त्यसै बखत आफ्नो प्रतिज्ञा तोडि दिए ।

فَلَمَّا كَشَفْنَا عَنْهُمُ الْعَذَابَ اِذَا هُمْ يَنْكُثُوْنَ ﴿٥٠﴾

५१) र फिरऔनले आफ्नो कौमका माझमा झ्याली पिटायो र भन्यो: कि “हे मेरा क़ौमका मानिसहरू ! के मिश्रको राज्य मेरो होइन ? र यी नहरहरू जो मेरो महलहरू मुनि बगिराखेका छन् ? के तिमीले देख्दैनौ ?

وَنَادَىٰ فِرْعَوْنُ فِي قَوْمِهِ قَالَ يَٰقَوْمِ أَلَيْسَ لِي مُلْكُ مِصْرَ وَهَٰذِهِ الْأَنْهَٰرُ تَجْرِي مِن تَحْتِيٓ ۖ أَفَلَا تُبْصِرُونَ ﴿٥١﴾

५२) बरु म त्यो व्यक्ति जसको कुनै इज्जत छैन र स्पष्ट बोल्न पनि सक्दैन उस भन्दा राम्रो छु ।”

أَمْ أَنَا۠ خَيْرٌ مِّنْ هَٰذَا الَّذِي هُوَ مَهِينٌ وَلَا يَكَادُ يُبِينُ ﴿٥٢﴾

५३) अच्छा उसमाथि सुनका कङ्गन किन आएनन् वा फरिश्ताहरू नै एकत्रित भएर उसको साथमा आउँथे ?

فَلَوْلَآ أُلْقِيَ عَلَيْهِ أَسْوِرَةٌ مِّن ذَهَبٍ أَوْ جَآءَ مَعَهُ الْمَلَٰٓئِكَةُ مُقْتَرِنِينَ ﴿٥٣﴾

५४) उसले आफ्नो कौमका मानिसहरूलाई मूर्ख बनायो, र उनीहरूले उसकै कुरा मानिहाले । निश्चय नै उनीहरू अवज्ञाकारी मानिसहरू थिए ।

فَاسْتَخَفَّ قَوْمَهُ فَأَطَاعُوهُ ۚ إِنَّهُمْ كَانُوا قَوْمًا فَٰسِقِينَ ﴿٥٤﴾

५५) फेरि जब उनीहरूले हामीलाई क्रोध दिलाए त हामीले उनीहरूसित बदला लियौं र हामीले ती सबैलाई डुबाइदियौं ।

فَلَمَّآ ءَاسَفُونَا انتَقَمْنَا مِنْهُمْ فَأَغْرَقْنَٰهُمْ أَجْمَعِينَ ﴿٥٥﴾

५६) अत: हामीले उनीहरूलाई बिति सकेका गरिदियौं र पछि आउनेहरूको निम्ति शिक्षाप्रद उदाहरण बनाइदियौं ।

فَجَعَلْنَٰهُمْ سَلَفًا وَمَثَلًا لِّلْءَاخِرِينَ ﴿٥٦﴾

५७) र जब मरियमको छोराको उदाहरण दिइयो, त हेर, त्यसबाट तिम्रा कौमका मानिसहरू (खुशीबाट) चिच्याउन थाले ।

وَلَمَّا ضُرِبَ ابْنُ مَرْيَمَ مَثَلًا إِذَا قَوْمُكَ مِنْهُ يَصِدُّونَ ﴿٥٧﴾

५८) र उनीहरूले भन्नथाले: कि हाम्रा उपास्यहरू राम्रा छन् वा उनी (मसीह) ? उनीहरूले यो कुरा तिमीसित झगडाको निम्ति भने, बरु उनीहरू त झगडा गर्ने खालकै मानिसहरू हुन् ।

وَقَالُوٓا ءَاٰلِهَتُنَا خَيۡرٌ اَمۡ هُوَ ؕ مَا ضَرَبُوۡهُ لَكَ اِلَّا جَدَلًا ؕ بَلۡ هُمۡ قَوۡمٌ خَصِمُوۡنَ ﴿۵۸﴾

५९) उनी (ईसा, मसीह) त यस्ता मानिस नै थिए, जसमाथि हामीले अनुकम्पा गर्‍यौं र उनलाई हामीले इस्राईलको सन्ततिको निम्ति एउटा आदर्श बनायौं ।

اِنۡ هُوَ اِلَّا عَبۡدٌ اَنۡعَمۡنَا عَلَيۡهِ وَجَعَلۡنٰهُ مَثَلًا لِّبَنِىۡۤ اِسۡرَآءِيۡلَ ﴿۵۹﴾

६०) यदि हामीले चाहेको भए तिमीहरूको सट्टा फरिश्ताहरू सृष्टि गरिदिन्थ्यौं, जो धरतीमा उत्तराधिकारी हुन्थे ।

وَلَوۡ نَشَآءُ لَجَعَلۡنَا مِنۡكُمۡ مَّلٰٓئِكَةً فِى الۡاَرۡضِ يَخۡلُفُوۡنَ ﴿۶۰﴾

६१) नि:सन्देह उनी (ईसा मसीह) क़यामतका निशानी हुन् । तसर्थ तिमीहरू क़यामतमाथि शंका नगर र मेरो कुरा मान । यही सोझो बाटो हो ।

وَاِنَّهٗ لَعِلۡمٌ لِّلسَّاعَةِ فَلَا تَمۡتَرُنَّ بِهَا وَاتَّبِعُوۡنِ ؕ هٰذَا صِرَاطٌ مُّسۡتَقِيۡمٌ ﴿۶۱﴾

६२) र शैतानले तिमीलाई रोकी न देओस् त्यो त तिम्रो खुल्ला रूपमा शत्रु हो ।

وَلَا يَصُدَّنَّكُمُ الشَّيۡطٰنُ ۚ اِنَّهٗ لَكُمۡ عَدُوٌّ مُّبِيۡنٌ ﴿۶۲﴾

६३) र जब "ईसा(अ.)ले" चमत्कारहरू लिएर आए तब उनले भने: "म तिम्रो पासमा तत्वदर्शिता लिएर आएको छु र केही यस्ता कुराहरू तिमीहरूलाई स्पष्ट गरिदिऊँ जसमा तिमीले मतभेद गर्दछौ यसर्थ तिमी अल्लाहसंग डर र मेरो कुरा मान ।

وَلَمَّا جَآءَ عِيۡسٰى بِالۡبَيِّنٰتِ قَالَ قَدۡ جِئۡتُكُمۡ بِالۡحِكۡمَةِ وَلِاُبَيِّنَ لَكُمۡ بَعۡضَ الَّذِىۡ تَخۡتَلِفُوۡنَ فِيۡهِ ۚ فَاتَّقُوا اللّٰهَ وَاَطِيۡعُوۡنِ ﴿۶۳﴾

إِنَّ اللَّهَ هُوَ رَبِّي وَرَبُّكُمْ فَاعْبُدُوهُ ۚ هَٰذَا صِرَاطٌ مُّسْتَقِيمٌ ﴿٦٤﴾

६४) अतः अल्लाह नै मेरो र तिम्रो पालनकर्ता हो, तसर्थ तिमी सबै उसैको उपसना गर । यही सोझो बाटो हो ।''

فَاخْتَلَفَ الْأَحْزَابُ مِن بَيْنِهِمْ ۖ فَوَيْلٌ لِّلَّذِينَ ظَلَمُوا مِنْ عَذَابِ يَوْمٍ أَلِيمٍ ﴿٦٥﴾

६५) फेरि इस्राईलका सन्ततिहरू मध्येका धेरै समूहरूले आपसमा विवाद गरे । तसर्थ बर्बादी छ, एउटा दुःखद दिनको यातनाबाट, ती मानिसहरूको निम्ति जसले अत्याचार गरे ।

هَلْ يَنظُرُونَ إِلَّا السَّاعَةَ أَن تَأْتِيَهُم بَغْتَةً وَهُمْ لَا يَشْعُرُونَ ﴿٦٦﴾

६६) यिनीहरू मात्र यस कुराको प्रतिक्षामा छन् कि कियामत उनीहरूमाथि अचानक आइपरोस् र उनीहरूलाई थाहासम्म नहोस् ।

الْأَخِلَّاءُ يَوْمَئِذٍ بَعْضُهُمْ لِبَعْضٍ عَدُوٌّ إِلَّا الْمُتَّقِينَ ﴿٦٧﴾

६७) त्यस दिन घनिष्ट मित्रहरू पनि एक अर्काको शत्रु बन्न पुग्नेछन्, मात्र संयमीहरू बाहेक ।

يَا عِبَادِ لَا خَوْفٌ عَلَيْكُمُ الْيَوْمَ وَلَا أَنتُمْ تَحْزَنُونَ ﴿٦٨﴾

६८) ''हे मेरो भक्तहरू ! आज न तिमीलाई कुनै भय वा हैरानी छ र न तिमी शोकाकुल हुनछौ ।''

الَّذِينَ آمَنُوا بِآيَاتِنَا وَكَانُوا مُسْلِمِينَ ﴿٦٩﴾

६९) जुन मानिसहरूले हाम्रा आयतहरूमाथि ईमान ल्याए र उनी (आज्ञाकारी) मुस्लिम थिए ।

ادْخُلُوا الْجَنَّةَ أَنتُمْ وَأَزْوَاجُكُمْ تُحْبَرُونَ ﴿٧٠﴾

७०) ''तिमी र तिम्रा पत्नीहरू हर्षित रूपले स्वर्गमा प्रवेश गरिहाल ।''

يُطَافُ عَلَيْهِم بِصِحَافٍ مِّن ذَهَبٍ وَأَكْوَابٍ ۖ وَفِيهَا مَا تَشْتَهِيهِ الْأَنفُسُ وَتَلَذُّ الْأَعْيُنُ ۖ وَأَنتُمْ فِيهَا خَالِدُونَ ﴿٧١﴾

७१) उनीहरूको चारैतिर सुनका तश्तरीहरू र प्यालाहरू गुज्रनेछन् र त्यहाँ ती सबै कुरा हुनेछन् जो मन र आँखालाई रुच्छन् र आनन्दित

गर्दछन् । "तिमी त्यसमा सदैव रहनेछौ ।"

وَتِلْكَ الْجَنَّةُ الَّتِيٓ أُوْرِثْتُمُوهَا بِمَا كُنْتُمْ تَعْمَلُونَ ﴿٧٢﴾

७२) र यो उही स्वर्ग हो, जसको तिमी उत्तराधिकारी बनाइएका छौ, तिम्रा कर्महरूको बदलामा ।

لَكُمْ فِيهَا فَاكِهَةٌ كَثِيرَةٌ مِّنْهَا تَأْكُلُونَ ﴿٧٣﴾

७३) यहाँ तिम्रो लागि धेरै प्रकारका स्वादिष्ट फलहरू छन् जुन तिमीले खाइरहने छौ ।"

إِنَّ الْمُجْرِمِينَ فِي عَذَابِ جَهَنَّمَ خَٰلِدُونَ ﴿٧٤﴾

७४) निःसंदेह पापीहरू सधैं नर्कको यातनामा रहनेछन् ।

لَا يُفَتَّرُ عَنْهُمْ وَهُمْ فِيهِ مُبْلِسُونَ ﴿٧٥﴾

७५) त्यो यातना उनीहरूमाथि कहिल्यै पनि हल्का हुनेछैन, र उनीहरू त्यसैमा निराश परिरहनेछन् ।

وَمَا ظَلَمْنَٰهُمْ وَلَٰكِن كَانُوا هُمُ الظَّٰلِمِينَ ﴿٧٦﴾

७६) र हामीले उनीमाथि अत्याचार गरेनौं, उनीहरू त स्वयं अत्याचारी थिए ।

وَنَادَوْا يَٰمَٰلِكُ لِيَقْضِ عَلَيْنَا رَبُّكَ قَالَ إِنَّكُم مَّٰكِثُونَ ﴿٧٧﴾

७७) उनीहरूले चिच्याई-चिच्याई भन्नेछन्: कि "हे मालिक ! तिम्रो पालनकर्ता हामीलाई मृत्यु देओस् ।" उसले भन्नेछ "तिमी सधैं यसैमा रहनेछौ ।"

لَقَدْ جِئْنَٰكُم بِالْحَقِّ وَلَٰكِنَّ أَكْثَرَكُمْ لِلْحَقِّ كَٰرِهُونَ ﴿٧٨﴾

७८) हामीले त तिम्रो पासमा सत्य लिएर आयौं, किन्तु तिमीमध्ये धेरै मानिसहरूले सत्यसँग घृणा गर्दथे ?

أَمْ أَبْرَمُوٓا أَمْرًا فَإِنَّا مُبْرِمُونَ ﴿٧٩﴾

७९) के उनीहरूले कुनै कुराको दृढ प्रतिज्ञा गरिसकेका छन् ? त हामीले पनि निश्चय गरिनेवाला छौं ।

أَمْ يَحْسَبُونَ أَنَّا لَا نَسْمَعُ سِرَّهُمْ وَنَجْوَاهُم ۚ بَلَىٰ وَرُسُلُنَا لَدَيْهِمْ يَكْتُبُونَ ﴿٨٠﴾

८०) के उनीहरूले ठान्दछन् कि हामीले उनीहरूका गोप्य कुरा र उनीहरूका कानेखुसीलाई सुन्दैनौं ? निश्चित रूपले हो, यो सबै हामी सुन्दछौं र हामीले पठाएको फरिश्ताहरू उनीहरूको पासमा सबै कुराहरू लेख्दैछन् ।''

قُلْ إِن كَانَ لِلرَّحْمَٰنِ وَلَدٌ فَأَنَا أَوَّلُ الْعَابِدِينَ ﴿٨١﴾

८१) तपाई भनिदिनुस् कि "यदि अल्लाहको कोही सन्तान भएको भए त सबैभन्दा पहिले म पूज्दथें ।

سُبْحَانَ رَبِّ السَّمَاوَاتِ وَالْأَرْضِ رَبِّ الْعَرْشِ عَمَّا يَصِفُونَ ﴿٨٢﴾

८२) यिनीहरूले जे-जति वर्णन गर्दछन्, आकाशहरू र धरती र अर्शको स्वामी त्यसभन्दा धेरै उच्च र पवित्र छ ।''

فَذَرْهُمْ يَخُوضُوا وَيَلْعَبُوا حَتَّىٰ يُلَاقُوا يَوْمَهُمُ الَّذِي يُوعَدُونَ ﴿٨٣﴾

८३) अब तपाईले उनीहरूलाई यिनै बहस र छलफल र खेलहरूमा छोडी दिनुस् । यहाँसम्म कि जुन दिनको उनीसित वाचा गरिन्छ, त्यसलाई देखिहालुन् ।

وَهُوَ الَّذِي فِي السَّمَاءِ إِلَٰهٌ وَفِي الْأَرْضِ إِلَٰهٌ ۚ وَهُوَ الْحَكِيمُ الْعَلِيمُ ﴿٨٤﴾

८४) उही आकाशहरूमा पूज्य छ र धरतीमा पनि उही पूजनीय छ र ऊ ठूलो तत्वदर्शी र सर्वज्ञ छ ।

وَتَبَارَكَ الَّذِي لَهُ مُلْكُ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا وَعِندَهُ عِلْمُ السَّاعَةِ وَإِلَيْهِ تُرْجَعُونَ ﴿٨٥﴾

८५) ऊ ठूलो बरकत वाला हो, जसको अधिकारमा छन् आकाशहरू र धरती र जे-जति ती दुवैको बीचमा छन् । र उसैको पासमा कयामतको समयको ज्ञान छ र उसैतिर तिमी फर्कने छौ ।

وَلَا يَمْلِكُ الَّذِينَ يَدْعُونَ مِن دُونِهِ الشَّفَاعَةَ إِلَّا مَن شَهِدَ بِالْحَقِّ وَهُمْ يَعْلَمُونَ ﴿٨٦﴾

८६) अल्लाह बाहेक जसलाई उनीहरूले पुकार्दछन् उनीहरूलाई सिफारिशको कुनै पनि अधिकार छैन, मात्र उसैलाई यो अधिकार प्राप्त छ जो सत्यलाई स्वीकार गर्दछन्, र उनीहरूलाई ज्ञान पनि छ ।

وَلَئِن سَأَلْتَهُم مَّنْ خَلَقَهُمْ لَيَقُولُنَّ اللَّهُ فَأَنَّىٰ يُؤْفَكُونَ ﴿٨٧﴾

८७) यदि तपाईले उनीहरूसित सोध्नु हुन्छ कि "उनीहरूलाई कसले सृष्टि गर्‍यौ ?" त उनीहरूले अवश्य भन्नेछन् कि "अल्लाहले" । त यिनीहरू कहाँ (विमुख भई) भौतारिराखेका छन् ?

وَقِيلِهِ يَا رَبِّ إِنَّ هَٰؤُلَاءِ قَوْمٌ لَّا يُؤْمِنُونَ ﴿٨٨﴾

८८) र उस (पैगम्बर)को यो भनाई कि "हे पालनकर्ता ! यिनीहरू यस्ता मानिस हुन् जसले ईमान ल्याउँदैनन् ।"

فَاصْفَحْ عَنْهُمْ وَقُلْ سَلَامٌ فَسَوْفَ يَعْلَمُونَ ﴿٨٩﴾

८९) त उनीहरूबाट तपाई विमुख भइहाल्नुस् र भन्नुस् "सलाम छ तिमीहरूलाई !" अन्ततः शीघ्र नै उनीहरूले थाहा पाइहाल्नेछन् ।



## सूरतुद् दुख़ान-४४




सूरतुद् दुख़ान मक्की हो, यसमा ५९ आयतहरू र ३ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) हा. मीम,

حٰمٓ ﴿١﴾

२) स्पष्ट किताबको कसम !

وَالْكِتٰبِ الْمُبِيْنِ ﴿٢﴾

३) नि:सन्देह हामीले यसलाई एउटा बरकतले भरिएको रातमा अवतरित गरेका छौं, हामी त मार्ग देखाउनेवाला हौं ।

اِنَّآ اَنْزَلْنٰهُ فِيْ لَيْلَةٍ مُّبٰرَكَةٍ اِنَّا كُنَّا مُنْذِرِيْنَ ﴿٣﴾

४) त्यसै रातमा तमाम तत्वदर्शीयुक्त कुरा निर्णित एवं स्पष्ट गरिन्छ ।

فِيْهَا يُفْرَقُ كُلُّ اَمْرٍ حَكِيْمٍ ﴿٤﴾

५) हामी कहाँबाट आदेश भएर, नि:सन्देह हामीले नै पैगम्बरलाई पठाउँछौं ।

اَمْرًا مِّنْ عِنْدِنَا ۭ اِنَّا كُنَّا مُرْسِلِيْنَ ﴿٥﴾

६) तिम्रो पालकर्ताको दयालुता हो । नि:सन्देह त्यो सबै कुरा सुन्नेवाला जान्नेवाला छ ।

رَحْمَةً مِّنْ رَّبِّكَ ۭ اِنَّهٗ هُوَ السَّمِيْعُ الْعَلِيْمُ ﴿٦﴾

७) आकाशहरू र धरती र जे-जति यी दुबैमा छन्, सबैको मालिक हो, यदि तिमी विश्वास गर्नेवाला हौ ।

رَبِّ السَّمٰوٰتِ وَالْاَرْضِ وَمَا بَيْنَهُمَا ۘ اِنْ كُنْتُمْ مُّوْقِنِيْنَ ﴿٧﴾

८) उस बाहेक अन्य कोही सत्य पूज्य छैन, उसैले जीवित गर्दछ र मार्दछ, त्यही तिम्रो र तिम्रा बाबु बाजेको पालनकर्ता हो ।

لَآ اِلٰهَ اِلَّا هُوَ يُحْيٖ وَيُمِيْتُ ۭ رَبُّكُمْ وَرَبُّ اٰبَاۗىِٕكُمُ الْاَوَّلِيْنَ ﴿٨﴾

९) तर यी मानिसहरू शंकामा परि खेलिराखेका छन् ।

بَلْ هُمْ فِي شَكٍّ يَلْعَبُونَ ﴿٩﴾

१०) तपाई त्यस दिनको प्रतीक्षागर्नुस् जबकि आकाशबाट सफा धुवाँ निस्कनेछ ।

فَارْتَقِبْ يَوْمَ تَأْتِي السَّمَاءُ بِدُخَانٍ مُّبِينٍ ﴿١٠﴾

११) जसले मानिसहरूले ढाकिहाल्नेछ यो कष्टदायक यातना हो ।

يَغْشَى النَّاسَ ۖ هَٰذَا عَذَابٌ أَلِيمٌ ﴿١١﴾

१२) भन्नेछन् हे पालनकर्ता ! हामीबाट यस यातनालाई टाढा राख, हामीले विश्वास गर्दछौं ।

رَّبَّنَا اكْشِفْ عَنَّا الْعَذَابَ إِنَّا مُؤْمِنُونَ ﴿١٢﴾

१३) अब उनीहरूलाई उपदेश केही लाभदायक हुनेछैन जबकि उनीहरूको पासमा पैगम्बर आइसकेका थिए जसले स्पष्ट रूपले कुरा वर्णन गर्दथे ।

أَنَّىٰ لَهُمُ الذِّكْرَىٰ وَقَدْ جَاءَهُمْ رَسُولٌ مُّبِينٌ ﴿١٣﴾

१४) अनि उनीहरूले उनीबाट विमुख भइहाले र भन्नथाले कि सिकाइएको दिवाना छ ।

ثُمَّ تَوَلَّوْا عَنْهُ وَقَالُوا مُعَلَّمٌ مَّجْنُونٌ ﴿١٤﴾

१५) हामीले यातना थोड़ै हटाइदिन्छौ त तिमी पुनः कुफ्र गर्नथाल्छौ ।

إِنَّا كَاشِفُو الْعَذَابِ قَلِيلًا ۚ إِنَّكُمْ عَائِدُونَ ﴿١٥﴾

१६) जुनदिन हामीले ठूलो गम्भीर पकडमा लिनेछौं, त निःसन्देह प्रतिशोध लिएर नै छाड्नेछौं ।

يَوْمَ نَبْطِشُ الْبَطْشَةَ الْكُبْرَىٰ إِنَّا مُنتَقِمُونَ ﴿١٦﴾

१७) र उनीहरूभन्दा पहिला फिरऔनको कौमको पनि परीक्षा लियौं र उनको पासमा एउटा अत्यन्त सज्जन रसूल आए ।

وَلَقَدْ فَتَنَّا قَبْلَهُمْ قَوْمَ فِرْعَوْنَ وَجَاءَهُمْ رَسُولٌ كَرِيمٌ ﴿١٧﴾

أَنْ أَدُّوٓا إِلَيَّ عِبَادَ اللّٰهِ ۖ إِنِّي لَكُمْ رَسُولٌ أَمِينٌ ﴿١٨﴾

१८) यो (भने) कि अल्लाहका दासहरूलाई मेरो जिम्मा सुम्पिदेऊ । निश्चय नै म तिम्रो निम्ति एउटा विश्वासनीय रसूल हूँ ।

وَأَن لَّا تَعْلُوا عَلَى اللّٰهِ ۖ إِنِّيٓ اٰتِيكُم بِسُلْطٰنٍ مُّبِينٍ ﴿١٩﴾

१९) र अल्लाहको सामु अटेरीपना नगर । म तिम्रो पासमा स्पष्ट प्रमाण लिएर आउने छु ।

وَإِنِّي عُذْتُ بِرَبِّي وَرَبِّكُمْ أَن تَرْجُمُونِ ﴿٢٠﴾

२०) र यस (कुरा) बाट कि तिमीले मलाई ढुंगा हानी-हानी मारिहाल, आफ्नो र तिम्रो पालनकर्ताको शरण माँग्दछु ।

وَإِن لَّمْ تُؤْمِنُوا لِي فَاعْتَزِلُونِ ﴿٢١﴾

२१) र यदि ममा विश्वास गर्दैनौ भने मबाट अलग भइहाल ।

فَدَعَا رَبَّهُۥٓ أَنَّ هٰٓؤُلَآءِ قَوْمٌ مُّجْرِمُونَ ﴿٢٢﴾

२२) तब आफ्नो पालनकर्तासंग प्रार्थना गरे कि यिनीहरू अवज्ञाकारी हुन् ।

فَأَسْرِ بِعِبَادِي لَيْلًا إِنَّكُم مُّتَّبَعُونَ ﴿٢٣﴾

२३) (आदेश भयो कि) मेरा बन्दाहरूलाई रातोरात लिएर गइहाल अवश्य तिमीलाई पछ्याउनेछन् ।

وَاتْرُكِ الْبَحْرَ رَهْوًا ۖ إِنَّهُمْ جُندٌ مُّغْرَقُونَ ﴿٢٤﴾

२४) र समुन्द्रलाई रोकिएको अवस्थामा नै छोडेर गइहाल । निश्चय यो सेनाहरूलाई डुबाइदिनेछ ।

كَمْ تَرَكُوا مِن جَنّٰتٍ وَّعُيُونٍ ﴿٢٥﴾

२५) उनीहरूले धेरै बगैचा र श्रोतहरू छोडेर गइहाले,

وَّزُرُوعٍ وَّمَقَامٍ كَرِيمٍ ﴿٢٦﴾

२६) र खेतीहरू र राम्रा घरहरू,

وَّنَعْمَةٍ كَانُوا فِيهَا فٰكِهِينَ ﴿٢٧﴾

२७) र सुखसयलका साधनहरू, जसमा उनीहरूले आनन्द लिने गर्दथे ।

كَذٰلِكَ ۖ وَأَوْرَثْنٰهَا قَوْمًا اٰخَرِينَ ﴿٢٨﴾

२८) यस्तै भयो (परिणाम) र हामीले

अरु मानिसहरूलाई उनीहरूका उत्तराधिकारी बनाइदियौं ।

२९) अनि न त आकाश र धरतीले उनीहरूको निम्ति विलाप गरे र न त उनीहरूलाई छुटकारा नै प्राप्त भयो ।

فَمَا بَكَتْ عَلَيْهِمُ السَّمَآءُ وَالْأَرْضُ وَمَا كَانُوْا مُنْظَرِيْنَ ﴿٢٩﴾

३०) र हामीले इस्राईलका सन्तानलाई अपमानजनक यातनाबाट छुटकारा दिलायौं ।

وَلَقَدْ نَجَّيْنَا بَنِيْٓ إِسْرَآءِيْلَ مِنَ الْعَذَابِ الْمُهِيْنِ ﴿٣٠﴾

३१) जो फिरऔनबाट थियो । निःसन्देह त्यो अटेरी (र) सीमाभन्दा अगाडि गइसकेको थियो ।

مِنْ فِرْعَوْنَ ۚ إِنَّهٗ كَانَ عَالِيًا مِّنَ الْمُسْرِفِيْنَ ﴿٣١﴾

३२) र हामीले जानीजानी बनी इस्राईललाई संसारवालाहरू मध्येबाट रोजेका थियौं ।

وَلَقَدِ اخْتَرْنٰهُمْ عَلٰى عِلْمٍ عَلَى الْعٰلَمِيْنَ ﴿٣٢﴾

३३) र उनलाई यस्ता निशानीहरू प्रदान गरेका थियौं, जसमा स्पष्ट परीक्षा थियो ।

وَاٰتَيْنٰهُمْ مِّنَ الْاٰيٰتِ مَا فِيْهِ بَلٰٓؤٌا مُّبِيْنٌ ﴿٣٣﴾

३४) यिनीहरूले यो नै भन्छन्,

إِنَّ هٰٓؤُلَآءِ لَيَقُوْلُوْنَ ﴿٣٤﴾

३५) कि हामीलाई मात्र पहिलो पटक मर्नु छ रे फेरि उठनु छैन,

إِنْ هِيَ إِلَّا مَوْتَتُنَا الْأُوْلٰى وَمَا نَحْنُ بِمُنْشَرِيْنَ ﴿٣٥﴾

३६) यदि तिमी साँचो हौ भने हाम्रा बाबुबाजेलाई ल्याऊ ।

فَأْتُوْا بِاٰبَآئِنَآ إِنْ كُنْتُمْ صٰدِقِيْنَ ﴿٣٦﴾

३७) के यिनीहरू राम्रा छन् वा "तुब्बाको" कौम वा ती मानिसहरू जो उनीभन्दा पहिला थिए । उनी सबैलाई विनष्ट गरिहालें, किनकि तिनीहरू अपराधी थिए ।

أَهُمْ خَيْرٌ أَمْ قَوْمُ تُبَّعٍ ۙ وَّالَّذِيْنَ مِنْ قَبْلِهِمْ ۚ أَهْلَكْنٰهُمْ ۖ إِنَّهُمْ كَانُوْا مُجْرِمِيْنَ ﴿٣٧﴾

وَمَا خَلَقْنَا السَّمٰوٰتِ وَالْاَرْضَ وَمَا بَيْنَهُمَا لٰعِبِيْنَ ﴿٣٨﴾

३८) हामीले आकाशहरू र धरतीलाई र जे-जाति उनीहरूको बीचमा छ, तिनलाई खेलमा बनाएको होइनौं ।

مَا خَلَقْنٰهُمَآ اِلَّا بِالْحَقِّ وَلٰكِنَّ اَكْثَرَهُمْ لَا يَعْلَمُوْنَ ﴿٣٩﴾

३९) बरु हामीले उनीहरूलाई सत्यताका साथ सृष्टि गर्‍यौ किन्तु उनीहरूमा अधिकतरले जान्दैनन् ।

اِنَّ يَوْمَ الْفَصْلِ مِيْقَاتُهُمْ اَجْمَعِيْنَ ﴿٤٠﴾

४०) निश्चय नै फैसलाको दिन उनीहरू सबैको निर्धारित समय हो,

يَوْمَ لَا يُغْنِيْ مَوْلًى عَنْ مَّوْلًى شَيْـًٔا وَّلَا هُمْ يُنْصَرُوْنَ ﴿٤١﴾

४१) जुनदिन कुनै मित्र, मित्रको कुनै काम आउनेछैन, र न उनीहरूलाई सहायता प्राप्त हुनेछ ।

اِلَّا مَنْ رَّحِمَ اللّٰهُ ۭ اِنَّهٗ هُوَ الْعَزِيْزُ الرَّحِيْمُ ﴿٤٢﴾

४२) किन्तु जसमाथि अल्लाहले दया गर्दछ । निश्चय नै त्यो सर्वशक्ति सम्पन्न अत्यन्त दयावान छ ।

اِنَّ شَجَرَتَ الزَّقُّوْمِ ﴿٤٣﴾

४३) निःसन्देह जक्कूमको (सिउँडी) वृक्ष,

طَعَامُ الْاَثِيْمِ ﴿٤٤﴾

४४) गुनेहगारहरूको भोजन हुनेछ,

كَالْمُهْلِ ۚ يَغْلِيْ فِي الْبُطُوْنِ ﴿٤٥﴾

४५) पग्लेको तामा जस्तोछ, पेटहरूमा उम्लनेछ ।

كَغَلْيِ الْحَمِيْمِ ﴿٤٦﴾

४६) जस्तो कि पानी उम्लिन्छ ।

خُذُوْهُ فَاعْتِلُوْهُ اِلٰى سَوَاۗءِ الْجَحِيْمِ ﴿٤٧﴾

४७) यसलाई समातिहाल र घिसार्दै नर्कको बीचमा लग ।

ثُمَّ صُبُّوْا فَوْقَ رَاْسِهٖ مِنْ عَذَابِ الْحَمِيْمِ ﴿٤٨﴾

४८) अनि उसको टाउकोमा उम्लिराखेको पानी खन्याइदेऊ ।

ذُقْ ڔ اِنَّكَ اَنْتَ الْعَزِيْزُ الْكَرِيْمُ ﴿٤٩﴾

४९) स्वाद चाख, तिमी त ठूलो बलशाली सज्जन थियौ ।

اِنَّ هٰذَا مَا كُنْتُمْ بِهٖ تَمْتَرُوْنَ ﴿٥٠﴾

५०) यो त्यहि हो जसमा तिमीहरूले शंका गर्ने गर्दथ्यौ ।

إِنَّ الْمُتَّقِينَ فِي مَقَامٍ أَمِينٍ ﴿٥١﴾

५१) निःसन्देह भय गर्नेहरू निश्चिन्तताको ठाउँमा हुनेछन् ।

فِي جَنَّاتٍ وَعُيُونٍ ﴿٥٢﴾

५२) बगैचाहरू र श्रोतहरूमा

يَلْبَسُونَ مِن سُندُسٍ وَإِسْتَبْرَقٍ مُّتَقَابِلِينَ ﴿٥٣﴾

५३) रेशमको बस्त्र लगाई एक-अर्काको आमने सामने बसेका हुनेछन् ।

كَذَٰلِكَ وَزَوَّجْنَاهُم بِحُورٍ عِينٍ ﴿٥٤﴾

५४) यसप्रकार हामीले गोरी वर्ण ठूला नेत्र भएकी स्त्रीहरूसित उनीहरूको विवाह गरिदिनेछौं ।

يَدْعُونَ فِيهَا بِكُلِّ فَاكِهَةٍ آمِنِينَ ﴿٥٥﴾

५५) त्यहाँ उनीहरूले निश्चिन्तताका साथ प्रत्येक किसिमका स्वादिष्ट फल मँगाइरहेका हुन्छन् ।

لَا يَذُوقُونَ فِيهَا الْمَوْتَ إِلَّا الْمَوْتَةَ الْأُولَىٰ ۖ وَوَقَاهُمْ عَذَابَ الْجَحِيمِ ﴿٥٦﴾

५६) त्यहाँ उनीहरूले मृत्युको स्वाद कहिले पनि चाख्नेछैनन् । मात्र पहिलो मृत्युको जे भयो सो भयो, र अल्लाहले उनीहरूलाई नर्कको यातनाबाट बचाइहाल्यो ।

فَضْلًا مِّن رَّبِّكَ ۚ ذَٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيمُ ﴿٥٧﴾

५७) यो सबै तिम्रो पालनकर्ताको विशेष उदार अनुग्रहहो । त्यही ठूलो सफलता हो ।

فَإِنَّمَا يَسَّرْنَاهُ بِلِسَانِكَ لَعَلَّهُمْ يَتَذَكَّرُونَ ﴿٥٨﴾

५८) हामीले यस कुरआनलाई तिम्रो भाषामा सहज एवं सुसाध्य बनाइदिएका छौं ताकि उनीहरूले शिक्षा प्राप्त गरुन् ।

فَارْتَقِبْ إِنَّهُم مُّرْتَقِبُونَ ﴿٥٩﴾

५९) अतः तिमीले पनि प्रतिक्षा गर, यिनीहरूले पनि प्रतिक्षा गर्दछन् ।

## सूरतुल् जासिया-४५



सूरतुल् जासिया मक्की हो, यसमा ३७ आयतहरू र ४ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) हा. मीम.,

حٰمٓ ①

२) यस किताबको अवतरण अल्लाहको तर्फबाट भएको हो, जो अत्यन्त अधिपत्यशाली, तत्वदर्शी छ ।

تَنْزِيْلُ الْكِتٰبِ مِنَ اللّٰهِ الْعَزِيْزِ الْحَكِيْمِ ②

३) निःसन्देह आकाशहरू र धरतीमा ईमानवालाहरूका निम्ति धेरै निशानीहरू छन् ।

اِنَّ فِي السَّمٰوٰتِ وَالْاَرْضِ لَاٰيٰتٍ لِّلْمُؤْمِنِيْنَ ③

४) र तिम्रो संरचनामा पनि र जनावरहरूमा पनि, जसलाई त्यसैले फैलाउँछ, विश्वास गर्नेहरूको निम्ति धेरै निशानीहरू छन् ।

وَفِيْ خَلْقِكُمْ وَمَا يَبُثُّ مِنْ دَآبَّةٍ اٰيٰتٌ لِّقَوْمٍ يُّوْقِنُوْنَ ④

५) र रात र दिनको फेरबदलमा पनि, र त्यस रोजीमा पनि जसलाई अल्लाहले आकाशबाट अवतरित गरेर उसद्वारा धरतीलाई त्यसको मृत्यु भइसके पश्चात जीवित पार्दछ र वायुहरूको परिवर्तनकालमा पनि ती मानिसहरूका निम्ति धेरै निशानीहरू छन् जो बुद्धिमान छन् ।

وَاخْتِلَافِ الَّيْلِ وَالنَّهَارِ وَمَآ اَنْزَلَ اللّٰهُ مِنَ السَّمَآءِ مِنْ رِّزْقٍ فَاَحْيَا بِهِ الْاَرْضَ بَعْدَ مَوْتِهَا وَتَصْرِيْفِ الرِّيٰحِ اٰيٰتٌ لِّقَوْمٍ يَّعْقِلُوْنَ ⑤

६) यी अल्लाहका आयतहरू हुन्, हामीले उनीहरूलाई सत्यताका साथ सुनाइराखे छौं । अब अल्लाह

تِلْكَ اٰيٰتُ اللّٰهِ نَتْلُوْهَا عَلَيْكَ بِالْحَقِّ فَبِاَيِّ حَدِيْثٍ بَعْدَ اللّٰهِ وَاٰيٰتِهٖ يُؤْمِنُوْنَ ⑥

र त्यसका आयतहरू पश्चात अन्य कुन कुरो छ जसमा उनीहरूले विश्वास गर्नेछन् ।

وَيْلٌ لِّكُلِّ أَفَّاكٍ أَثِيمٍ ۝٧

७) प्रत्येक झूठा गुनहगारलाई “वैल” सत्यानाश छ,

يَسْمَعُ آيَاتِ اللَّهِ تُتْلَىٰ عَلَيْهِ ثُمَّ يُصِرُّ مُسْتَكْبِرًا كَأَن لَّمْ
يَسْمَعْهَا ۖ فَبَشِّرْهُ بِعَذَابٍ أَلِيمٍ ۝٨

८) जुन अल्लाहका आयतहरूलाई सुन्दछ जुन पढेर सुनाइन्छ तर घमण्ड गरी यस्तो जिद गर्छ, मानौं तिनलाई सुनेकै छैन, त यस्ता व्यक्तिहरूलाई दुःख दिने यातनाको शुभ-समाचार सुनाइदेऊ ।

وَإِذَا عَلِمَ مِنْ آيَاتِنَا شَيْئًا اتَّخَذَهَا هُزُوًا ۚ أُولَٰئِكَ
لَهُمْ عَذَابٌ مُّهِينٌ ۝٩

९) र जब हाम्रा केही आयतहरूबारे उनीहरूलाई थाहा हुन्छ, तब तिनका उपहास गर्दछन्, यस्ता व्यक्तिहरूको निम्ति अपमानजनक यातना छ ।

مِّن وَرَائِهِمْ جَهَنَّمُ ۖ وَلَا يُغْنِي عَنْهُم مَّا كَسَبُوا شَيْئًا
وَلَا مَا اتَّخَذُوا مِن دُونِ اللَّهِ أَوْلِيَاءَ ۖ وَلَهُمْ عَذَابٌ
عَظِيمٌ ۝١٠

१०) उनीहरूको पछाडि नर्क छ, र जुन काम उनीहरूले गरिरहे, उनीहरूको कुनै पनि काम आउँनेछैन, र न ती नै जसलाई उनीहरूले अल्लाह बाहेक पूज्य बनाएका थिए । र उनीहरूको निम्ति ठूलो यातना छ ।

هَٰذَا هُدًى ۖ وَالَّذِينَ كَفَرُوا بِآيَاتِ رَبِّهِمْ لَهُمْ عَذَابٌ
مِّن رِّجْزٍ أَلِيمٌ ۝١١

११) यो (कुरआन) सर्वथा मार्गदर्शन हो । र जुन मानिसले आफ्नो पालनकर्ताका आयतहरूलाई इन्कार गरे, उनीहरूको निम्ति अत्यन्त कष्टदायक यातना छ ।

१२) त्यो अल्लाह नै हो जसले समुन्द्रलाई तिम्रो वशीभूत गरिदिएको छ, ताकि उसको आदेशले त्यसमा डुङ्गाहरू चलुन्, र ताकि तिमीले उसको उदार अनुग्रह खोजः र यसकारण कि तिमी कृतज्ञता देखाऊ ।

اَللّٰهُ الَّذِیْ سَخَّرَ لَكُمُ الْبَحْرَ لِتَجْرِیَ الْفُلْكُ فِیْهِ بِاَمْرِهٖ وَلِتَبْتَغُوْا مِنْ فَضْلِهٖ وَلَعَلَّكُمْ تَشْكُرُوْنَ ﴿١٢﴾

१३) जे-जाति कुरा आकाशहरूमा छन् र जे-जाति धरतीमा छन्, त्यसले ती सबैलाई आफ्नो तर्फबाट तिम्रो अधिकारमा लगाइराखेको छ । निश्चय नै यसमा ती मानिसहरूको निम्ति निशानीहरू छन्, जसले बुद्धिले काम लिन्छन् ।

وَسَخَّرَ لَكُمْ مَّا فِی السَّمٰوٰتِ وَمَا فِی الْاَرْضِ جَمِیْعًا مِّنْهُ ؕ اِنَّ فِیْ ذٰلِكَ لَاٰیٰتٍ لِّقَوْمٍ یَّتَفَكَّرُوْنَ ﴿١٣﴾

१४) मोमिनहरूलाई भनिदेऊः कि "जुन मानिसहरूले अल्लाहका (नराम्रो) दिनको आशा गर्दैनन् उनीहरूलाई क्षमा गरिदेऊन् ताकि अल्लाह तआलाले उनीहरूलाई उनीहरूको आफ्नो कमाईको प्रतिफल देओस् ।"

قُلْ لِّلَّذِیْنَ اٰمَنُوْا یَغْفِرُوْا لِلَّذِیْنَ لَا یَرْجُوْنَ اَیَّامَ اللّٰهِ لِیَجْزِیَ قَوْمًۢا بِمَا كَانُوْا یَكْسِبُوْنَ ﴿١٤﴾

१५) जसले राम्रो कर्म गर्दछ, त्यसले आफ्नो निम्ति गर्नेछ र जसले नराम्रो कर्म गर्दछ त त्यसको हानि त्यसैले बेहोर्नु पर्नेछ, अनि तिमी आफ्नो पालनकर्तातिर फर्कनेछौ ।

مَنْ عَمِلَ صَالِحًا فَلِنَفْسِهٖ ۚ وَمَنْ اَسَآءَ فَعَلَیْهَا ؗ ثُمَّ اِلٰی رَبِّكُمْ تُرْجَعُوْنَ ﴿١٥﴾

१६) निश्चय नै हामीले बनी इस्राईलका सन्तानलाई किताब र हुकूमत र पैगम्बरी प्रदान गरेका थियौं । उनीहरूलाई पवित्र जीविका पनि

وَلَقَدْ اٰتَیْنَا بَنِیْۤ اِسْرَآءِیْلَ الْكِتٰبَ وَالْحُكْمَ وَالنُّبُوَّةَ وَرَزَقْنٰهُمْ مِّنَ الطَّیِّبٰتِ وَفَضَّلْنٰهُمْ عَلَی الْعٰلَمِیْنَ ﴿١٦﴾

प्रदान गऱ्यौं र संसार माथि
उनलाई श्रेष्ठता प्रदान गऱ्यौं ।

१७) र उनीहरूलाई धर्मको बारेमा
स्पष्ट प्रमाणहरू प्रदान गऱ्यौ, अनि
उनीहरूले जुन विवाद गरे, (त्यो)
ज्ञान आइसके पश्चात आपसी
ज्यादतीको कारणले गरे । निश्चय
नै तिम्रो पालनकर्ता कियामतका दिन
उनीहरू बीच ती कुराको बारेमा
फैसला गरिदिनेछ, जसमा उनीहरू
आपसमा विवाद गरिराखेका छन् ।

وَآتَيْنَاهُم بَيِّنَاتٍ مِّنَ الْأَمْرِ ۖ فَمَا اخْتَلَفُوا إِلَّا مِن بَعْدِ
مَا جَاءَهُمُ الْعِلْمُ بَغْيًا بَيْنَهُمْ ۚ إِنَّ رَبَّكَ
يَقْضِي بَيْنَهُمْ يَوْمَ الْقِيَامَةِ فِيمَا كَانُوا فِيهِ
يَخْتَلِفُونَ ﴿١٧﴾

१८) अनि हामीले तिमीलाई धर्मको
खुला मार्गमा स्थापित गऱ्यौं, तसर्थ
त्यसैको अनुशरण गर र अज्ञानीहरूका
इच्छाहरूको पछि पछि नलाग्नु ।

ثُمَّ جَعَلْنَاكَ عَلَىٰ شَرِيعَةٍ مِّنَ الْأَمْرِ فَاتَّبِعْهَا
وَلَا تَتَّبِعْ أَهْوَاءَ الَّذِينَ لَا يَعْلَمُونَ ﴿١٨﴾

१९) यिनीहरू अल्लाहको सामु तिम्रो कुनै
काम आउने छैनन्, अत्याचारीहरू
एक अर्काका मित्र हुन्छन् र अल्लाह
परहेजगारहरूको मित्र हो ।

إِنَّهُمْ لَن يُغْنُوا عَنكَ مِنَ اللَّهِ شَيْئًا ۚ وَإِنَّ الظَّالِمِينَ
بَعْضُهُمْ أَوْلِيَاءُ بَعْضٍ ۖ وَاللَّهُ وَلِيُّ الْمُتَّقِينَ ﴿١٩﴾

२०) यो (कुरआन) मानिसहरूको निम्ति
हिक्मतको कुरा हो, जसले विश्वास
गर्दछन् उनीहरूको निम्ति मार्गदर्शन
र दयालुता हो ।

هَٰذَا بَصَائِرُ لِلنَّاسِ وَهُدًى وَرَحْمَةٌ لِّقَوْمٍ
يُوقِنُونَ ﴿٢٠﴾

२१) जसले नराम्रो कर्म गर्दछन्, के
उनीहरूले यो ठान्दछन्, कि हामीले
उनीलाई ती मानिसहरू जस्तो
बनाइदिन्छौं, जसले विश्वास गरे, र
असल कर्म गरी रहे (र) उनीहरूको

أَمْ حَسِبَ الَّذِينَ اجْتَرَحُوا السَّيِّئَاتِ أَن نَّجْعَلَهُمْ
كَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ سَوَاءً مَّحْيَاهُمْ
وَمَمَاتُهُمْ ۚ سَاءَ مَا يَحْكُمُونَ ﴿٢١﴾

जीवन र मृत्यु एकनास हुनेछ ? यिनीहरूले जो निर्णय गर्दछन् ती सबै नराम्रा छन् ।

وَخَلَقَ اللَّهُ السَّمَاوَاتِ وَالْأَرْضَ بِالْحَقِّ وَلِتُجْزَىٰ كُلُّ نَفْسٍ بِمَا كَسَبَتْ وَهُمْ لَا يُظْلَمُونَ ﴿٢٢﴾

२२) र अल्लाहले आकाशहरू र धरतीलाई संतुलनको साथ सृष्टि गऱ्यौ र यसकारण, कि प्रत्येक व्यक्तिलाई उसको कमाईको प्रतिफल दिइयोस्, र उनी माथि अत्याचार गरिने छैन ।

أَفَرَأَيْتَ مَنِ اتَّخَذَ إِلَٰهَهُ هَوَاهُ وَأَضَلَّهُ اللَّهُ عَلَىٰ عِلْمٍ وَخَتَمَ عَلَىٰ سَمْعِهِ وَقَلْبِهِ وَجَعَلَ عَلَىٰ بَصَرِهِ غِشَاوَةً فَمَن يَهْدِيهِ مِن بَعْدِ اللَّهِ ۚ أَفَلَا تَذَكَّرُونَ ﴿٢٣﴾

२३) के तिमीले त्यस व्यक्तिलाई पनि देख्यौ ? जसले आफ्नो हवसलाई उपास्य बनाइहाल्यो ? अल्लाहले ज्ञानको बावजूद उसलाई मार्गबिचलनमा पारिदियो, र उसका कान र हृदय माथि ठप्पा लगाइदियो र उनीको आँखाहरूमाथि आवरण हालिदियो । अब अल्लाह पश्चात कसले उसलाई मार्गमा ल्याउन सक्छ ? के तिमीले शिक्षा ग्रहण गर्दैनौ ?

وَقَالُوا مَا هِيَ إِلَّا حَيَاتُنَا الدُّنْيَا نَمُوتُ وَنَحْيَا وَمَا يُهْلِكُنَا إِلَّا الدَّهْرُ ۚ وَمَا لَهُم بِذَٰلِكَ مِنْ عِلْمٍ ۖ إِنْ هُمْ إِلَّا يَظُنُّونَ ﴿٢٤﴾

२४) र उनीहरूले भन्दछन्: कि "हाम्रो जीवन त मात्र सांसारिक जीवन नै हो । हामी मर्दछौं, जिउँदछौ र बाँच्दछौं । र हामीलाई त मात्र जमाना नै विनष्ट गर्दछ ।" उनीहरूको पासमा यसको कुनै ज्ञान छैन । उनीहरूले त मात्र अटकल गर्दछन् ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ مَّا كَانَ حُجَّتَهُمْ إِلَّا أَن قَالُوا ائْتُوا بِآبَائِنَا إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

२५) र जब उनीहरूको सामु हाम्रा स्पष्ट आयतहरू पढिन्छन, त उनीहरूको यही हुज्जत हुन्छ कि यदि साँचो हौ भने हाम्रा बाबु बाजेलाई ल्याऊ ।

२६) भनिदेऊः कि “अल्लाहले नै तिमीलाई जीवन प्रदान गर्दछ, अनि तिमीलाई मृत्यु दिन्छ, अनि तिमीलाई कियामतका दिन, जसको आउनुमा सन्देह छैन, एकत्रित गर्नेछ, तर धेरैले जान्दैनन् ।”

قُلِ اللّٰهُ يُحْيِيكُمْ ثُمَّ يُمِيتُكُمْ ثُمَّ يَجْمَعُكُمْ إِلَىٰ يَوْمِ الْقِيٰمَةِ لَا رَيْبَ فِيهِ وَلٰكِنَّ أَكْثَرَ النَّاسِ لَا يَعْلَمُونَ ﴿٢٦﴾

२७) र आकाशहरू र धरतीको बादशाही अल्लाह कै हो । र जुन दिन कयामतको घटना घटित हुनेछ त्यसदिन असत्यवादीहरू नोक्सानीमा हुनेछन् ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْأَرْضِ ۚ وَيَوْمَ تَقُومُ السَّاعَةُ يَوْمَئِذٍ يَخْسَرُ الْمُبْطِلُونَ ﴿٢٧﴾

२८) तपाई हेर्नु हुनेछ कि प्रत्येक समूह घुँडा टेकि निहुरीराखे छन् । प्रत्येक समूह आफ्नो किताबतिर बोलाइनेछन् । “आज तिमीलाई त्यसैको प्रतिफल दिइनेछ जो तिमीहरू गर्दथियौ ।”

وَتَرَىٰ كُلَّ أُمَّةٍ جَاثِيَةً ۚ كُلُّ أُمَّةٍ تُدْعَىٰ إِلَىٰ كِتٰبِهَا ۖ الْيَوْمَ تُجْزَوْنَ مَا كُنْتُمْ تَعْمَلُونَ ﴿٢٨﴾

२९) यो हाम्रो किताबले तिम्रो बारेमा सत्यलाई वर्णन गरिदिनेछ । निश्चय नै हामीले लेखाउँदै आइरहेका छौं, जुन कि तिमीले गर्ने गर्दथ्यौ ।

هٰذَا كِتٰبُنَا يَنْطِقُ عَلَيْكُمْ بِالْحَقِّ ۚ إِنَّا كُنَّا نَسْتَنْسِخُ مَا كُنْتُمْ تَعْمَلُونَ ﴿٢٩﴾

३०) अतः जुन मानिसहरूले विश्वास गरे र उनीहरूले असल कर्म गरे उनीहरूलाई उनीहरूको पालनकर्ताले आफ्नो दयालुतामा प्रवेश गराउनेछ, यही नै स्पष्ट सफलता हो ।

فَأَمَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصّٰلِحٰتِ فَيُدْخِلُهُمْ رَبُّهُمْ فِي رَحْمَتِهِ ۚ ذٰلِكَ هُوَ الْفَوْزُ الْمُبِينُ ﴿٣٠﴾

३१) र जसले कुफ्र गरे, (उनीहरूसित भनिनेछ कि) के हाम्रा आयतहरू तिमीलाई पढेर न सुनाइन्नथे ? तर

وَأَمَّا الَّذِينَ كَفَرُوا أَفَلَمْ تَكُنْ آيٰتِي تُتْلَىٰ عَلَيْكُمْ فَاسْتَكْبَرْتُمْ وَكُنْتُمْ قَوْمًا مُجْرِمِينَ ﴿٣١﴾

तिमीले घमण्ड गऱ्यौ र तिमीहरू अपराधी मानिसहरू नै थियौ ।

وَإِذَا قِيلَ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ وَالسَّاعَةُ لَا رَيْبَ فِيهَا قُلْتُم مَّا نَدْرِي مَا السَّاعَةُ إِن نَّظُنُّ إِلَّا ظَنًّا وَمَا نَحْنُ بِمُسْتَيْقِنِينَ ﴿٣٢﴾

३२) र जब भनिन्थ्यो कि अल्लाहको वचन बिल्कुल्लै सत्य हो र कियामतमा कुनै सन्देह छैन, त तिमी भन्दथ्यौ कि हामीलाई थाहा छैन कि कियामत के हो ? हामीलाई त मात्र कल्पना जस्तो प्रतीत हुन्छ र हामी विश्वासै गर्दैनौं ।

وَبَدَا لَهُمْ سَيِّئَاتُ مَا عَمِلُوا وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٣٣﴾

३३) (त्यस बेला) उनीहरूको कर्महरूको अवैधता जाहेर भइहाल्यो र उनीहरूले जुन कुरो गर्दथे ती कुराले उनीहरूलाई घेरिहाल्यो ।

وَقِيلَ الْيَوْمَ نَنسَاكُمْ كَمَا نَسِيتُمْ لِقَاءَ يَوْمِكُمْ هَٰذَا وَمَأْوَاكُمُ النَّارُ وَمَا لَكُم مِّن نَّاصِرِينَ ﴿٣٤﴾

३४) र भनिनेछ कि जुन प्रकार तिमीले यस दिनको अउने कुरालाई बिर्सिराखेका थियौ, त्यसै प्रकार आज हामीले पनि तिमीलाई बिर्सिदिने छौं, र तिम्रो बास्स्थान नर्क हो र कोही तिम्रा सहायक छैन् ।

ذَٰلِكُم بِأَنَّكُمُ اتَّخَذْتُمْ آيَاتِ اللَّهِ هُزُوًا وَغَرَّتْكُمُ الْحَيَاةُ الدُّنْيَا ۚ فَالْيَوْمَ لَا يُخْرَجُونَ مِنْهَا وَلَا هُمْ يُسْتَعْتَبُونَ ﴿٣٥﴾

३५) यो यस कारण हो कि तिमीले अल्लाहको आयतहरूलाई मजाक ठानेका थियौ र संसारिक जीवनले तिमीलाई भ्रममा पारेको थियो । आज यी मानिसहरू न त नर्कबाट निकालिनेछन र न उनीहरूको प्रायश्चित स्वीकारिनेछ ।

فَلِلَّهِ الْحَمْدُ رَبِّ السَّمَاوَاتِ وَرَبِّ الْأَرْضِ رَبِّ الْعَالَمِينَ ﴿٣٦﴾

३६) अतः सम्पूर्ण प्रशंसा अल्लाहको लागि छ जो आकाशहरूको पालनकर्ता र

धरतीको पालनकर्ता र सम्पूर्ण ब्रह्माण्डको पालनकर्ता हो ।

وَلَهُ الْكِبْرِيَاءُ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۖ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٣٧﴾

३७) आकाशहरू र धरतीमा उनकै गरीमामै बड़ाई छ । र ऊ अधिपत्यशाली अत्यन्त तत्वदर्शी छ ।



# सूरतुल् अहक़ाफ-४६




सूरतुल् अहक़ाफ़ मक्की हो यसमा ३५ आयतहरू र ४ रुकूअहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

१) हा. मीम,

حمٓ ①

२) यस किताबको अवतरण अल्लाहको तर्फबाट हो, जो अधिपत्यशाली, अत्यन्त तत्वदर्शी छ ।

تَنزِيلُ الْكِتَابِ مِنَ اللَّهِ الْعَزِيزِ الْحَكِيمِ ②

३) हामीले आकाशहरू र धरतीलाई र जे जति यी दुवैको बीचमा छन्, उच्चतम कुशलताका साथ र एउटा निश्चित अवधिसम्मका लागि सृष्टि गरेका छौं, तर जुन मानिसहरूले इन्कार गरेका छन्, तिनीहरूले त्यो कुरामा ध्यान दिंदैनन् जसबाट उनीहरूलाई सावधान गरिएको छ ।

مَا خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا إِلَّا بِالْحَقِّ وَأَجَلٍ مُّسَمًّى ۚ وَالَّذِينَ كَفَرُوا عَمَّا أُنذِرُوا مُعْرِضُونَ ③

४) तपाई भन्नुस्, हेर जसलाई तिमीले अल्लाह बाहेक पुकार्दछौ, ? मलाई पनि देखाऊ कि उनीहरूले धरतीको कुन भागको सृष्टि गरेका छन् वा आकाशहरूमा उनीहरूको कुन भाग छ । यदि तिमी साँचो हौ भने यसभन्दा पहिलाको कुनै किताब मेरो पासमा ल्याऊ वा ज्ञानको कुनै अवशेष ।

قُلْ أَرَأَيْتُم مَّا تَدْعُونَ مِن دُونِ اللَّهِ أَرُونِي مَاذَا خَلَقُوا مِنَ الْأَرْضِ أَمْ لَهُمْ شِرْكٌ فِي السَّمَاوَاتِ ۖ ائْتُونِي بِكِتَابٍ مِّن قَبْلِ هَٰذَا أَوْ أَثَارَةٍ مِّنْ عِلْمٍ إِن كُنتُمْ صَادِقِينَ ④

وَمَنْ أَضَلُّ مِمَّن يَدْعُوا مِن دُونِ اللَّهِ مَن لَّا يَسْتَجِيبُ لَهُ إِلَىٰ يَوْمِ الْقِيَامَةِ وَهُمْ عَن دُعَائِهِمْ غَافِلُونَ ﴿٥﴾

५) त्यस व्यक्ति भन्दा बढी पथभ्रष्ट को होला ? जसले अल्लाहलाई छाडि यस्तोलाई पुकार्दछन् जसले कयामतको दिनसम्म उनीहरूको प्रार्थनालाई स्वीकार गर्न सक्दैन, बरु उनीहरूको पुकारबाट एकदमः अज्ञान छन् ।

وَإِذَا حُشِرَ النَّاسُ كَانُوا لَهُمْ أَعْدَاءً وَكَانُوا بِعِبَادَتِهِمْ كَافِرِينَ ﴿٦﴾

६) र जब मानिसहरूलाई एकत्रित गरिनेछ तब यिनीहरू उनीहरूको शत्रु हुनेछन्ः र तिनीहरूको उपासनाबाट स्पष्ट इन्कार गर्नेछन् ।

وَإِذَا تُتْلَىٰ عَلَيْهِمْ آيَاتُنَا بَيِّنَاتٍ قَالَ الَّذِينَ كَفَرُوا لِلْحَقِّ لَمَّا جَاءَهُمْ هَٰذَا سِحْرٌ مُّبِينٌ ﴿٧﴾

७) र जब हाम्रा स्पष्ट आयतहरू उनीहरूलाई पढेर सुनाइन्छन्, तब सत्य आइसके पछि त्यसलाई इन्कार गर्ने व्यक्तिहरूले भन्दछन् कि यो त खुल्ला जादू हो ।

أَمْ يَقُولُونَ افْتَرَاهُ ۖ قُلْ إِنِ افْتَرَيْتُهُ فَلَا تَمْلِكُونَ لِي مِنَ اللَّهِ شَيْئًا ۖ هُوَ أَعْلَمُ بِمَا تُفِيضُونَ فِيهِ ۖ كَفَىٰ بِهِ شَهِيدًا بَيْنِي وَبَيْنَكُمْ ۖ وَهُوَ الْغَفُورُ الرَّحِيمُ ﴿٨﴾

८) के उनीहरूले भन्दछन्ः कि यसलाई उनले स्वयं नै रचिहालेका छन् ? तपाई भनिदिनुस् यदि "मैले नै यसलाई स्वयं रचेको छु भने अल्लाहको विरुद्ध मेरो निम्ति तिमीलाई कुनै पनि अधिकार छैन । यस (कुरआन) को विषयमा तिमीले जुन कुरा भन्न, सुन्न लागिराखेका छौ, त्यसले उसलाई राम्ररी जान्दछ, उही नै मेरो र तिम्रो बीचमा साक्षीको लागि पर्याप्त छ । र ऊ बडो क्षमाशील अत्यन्त दयावान छ ।

९) (हे मोहम्मद स.) भनिदिनुस् ! कि "म कुनै एकदम अनौठो रसूल आएको होइन । र मलाई थाहा छैन कि मसँग र तिमीसंग के गरिनेछ म त उसको मात्र पैरवी गर्दछु, जुन म तिर वह्य पठाइन्छ र म त खुल्लम खुल्ला सावधान गर्नेवाला हूँ ।"

قُلْ مَا كُنتُ بِدْعًا مِّنَ الرُّسُلِ وَمَآ أَدْرِي مَا يُفْعَلُ بِي وَلَا بِكُمْ ۖ إِنْ أَتَّبِعُ إِلَّا مَا يُوحَىٰٓ إِلَيَّ وَمَآ أَنَا إِلَّا نَذِيرٌ مُّبِينٌ ﴿٩﴾

१०) तपाई भनिदिनुस्: कि (तिमीले सोचेको पनि छौ कि यसको के परिणाम हुनेछ)? "यदि यो कुरआन अल्लाह कहाँबाट आएको छ र तिमीले त्यसलाई इन्कार गरिहाल्यौ, र इस्राईलका सन्तानहरू मध्येबाट एउटाले त्यसैको एउटा भागको गवाही पनि दिइसकेको र उसले ईमान पनि ल्याई सकेको छ र तिमी घमण्डमा नै परिरह्यौ । अनि निःसंदेह अल्लाहले त अपराधीहरूलाई मार्गदर्शन गर्दैन ।

قُلْ أَرَءَيْتُمْ إِن كَانَ مِنْ عِندِ اللَّهِ وَكَفَرْتُم بِهِۦ وَشَهِدَ شَاهِدٌ مِّنۢ بَنِيٓ إِسْرَٰٓءِيلَ عَلَىٰ مِثْلِهِۦ فَـَٔامَنَ وَاسْتَكْبَرْتُمْ ۖ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الظَّٰلِمِينَ ﴿١٠﴾

११) जुन मानिसहरूले इन्कार गरे, उनीहरूले ईमानवालाहरूको बारेमा भन्दछन् : "यदि यो राम्रो भएको भए, उनीहरू हामीभन्दा त्यस तर्फ अग्रसर हुँदैनथे ।" र जब उनीहरूले उसबाट नसीहत ग्रहण गरेनन् तब अवश्य भन्नेछन् : "यो त पूरानो असत्य हो ।"

وَقَالَ الَّذِينَ كَفَرُوا لِلَّذِينَ ءَامَنُوا لَوْ كَانَ خَيْرًا مَّا سَبَقُونَآ إِلَيْهِ ۚ وَإِذْ لَمْ يَهْتَدُوا بِهِۦ فَسَيَقُولُونَ هَٰذَآ إِفْكٌ قَدِيمٌ ﴿١١﴾

१२) र यसभन्दा पहिला "मूसा(अ.)को" किताब पथप्रदर्शक र दयाको रूपमा थियो र यो किताब, हो

وَمِن قَبْلِهِۦ كِتَٰبُ مُوسَىٰٓ إِمَامًا وَرَحْمَةً ۚ وَهَٰذَا كِتَٰبٌ مُّصَدِّقٌ لِّسَانًا عَرَبِيًّا لِّيُنذِرَ الَّذِينَ ظَلَمُوا وَبُشْرَىٰ لِلْمُحْسِنِينَ ﴿١٢﴾

समर्थन गर्नेवाला अरबी भाषामा ताकि ती मानिसहरूलाई सचेत गरोस् जसले अत्याचार गर्दछन् र उत्तम कार्यगर्नेहरूलाई शुभ सूचना देओस् ।

إِنَّ الَّذِينَ قَالُوا رَبُّنَا اللَّهُ ثُمَّ اسْتَقَامُوا فَلَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿١٣﴾

१३) नि:संदेह जुन मानिसहरूले भने कि "हाम्रो पालनकर्ता अल्लाह हो, अनि उनीहरू त्यसमा दृढ रहे, त उनीहरूलाई न कुनै भय हुनेछ र न त दु:खी हुनेछन् ।"

أُولَٰئِكَ أَصْحَٰبُ الْجَنَّةِ خَٰلِدِينَ فِيهَا جَزَاءً بِمَا كَانُوا يَعْمَلُونَ ﴿١٤﴾

१४) यही जन्नतवाला हुन् जो सधैं यसमा रहनेछन् । त्यसको प्रतिफल हो, जुन कि उनीहरूले गर्ने गर्दथे ।

وَوَصَّيْنَا الْإِنسَٰنَ بِوَٰلِدَيْهِ إِحْسَٰنًا ۖ حَمَلَتْهُ أُمُّهُ كُرْهًا وَوَضَعَتْهُ كُرْهًا ۖ وَحَمْلُهُ وَفِصَٰلُهُ ثَلَٰثُونَ شَهْرًا ۚ حَتَّىٰٓ إِذَا بَلَغَ أَشُدَّهُ وَبَلَغَ أَرْبَعِينَ سَنَةً قَالَ رَبِّ أَوْزِعْنِيٓ أَنْ أَشْكُرَ نِعْمَتَكَ الَّتِيٓ أَنْعَمْتَ عَلَيَّ وَعَلَىٰ وَٰلِدَيَّ وَأَنْ أَعْمَلَ صَٰلِحًا تَرْضَىٰهُ وَأَصْلِحْ لِي فِي ذُرِّيَّتِيٓ ۖ إِنِّي تُبْتُ إِلَيْكَ وَإِنِّي مِنَ الْمُسْلِمِينَ ﴿١٥﴾

१५) र हामीले मानिसलाई आफ्ना आमा बाबुसँग राम्रो व्यवहार गर्न आदेश दिएका छौं । उसकी आमाले उसलाई पेटमा दु:खका साथ राखिन् र उसलाई दु:खका साथ जन्म पनि दिइन् । र उसको गर्भको अवस्थामा रहने र दूध छोडाउने अवधि ३० महिना छ । यहाँसम्म कि जब ऊ खुब तन्नेरी भयो र ४० वर्षको उमेर भयो । तब उसले भन्यो : "हे मेरो पालनकर्ता ! मलाई अवसर देऊ ताकि म तिम्रो त्यस अनुकम्पाप्रति कृतज्ञता देखाऊँ जुन कि तिमीले ममाथि र मेरा मातापितामाथि गरेका छौ । र यो कि यस्तो राम्रो कार्य गरूँ जुनकि

तिमीलाई प्रिय छ, र मेरो लागि मेरा सन्ततिलाई पनि असल बनाई देऊ । म तिमीतिर प्रवृत्त हुन्छु र म आज्ञाकारी मध्ये छु ।

أُولَٰئِكَ الَّذِينَ نَتَقَبَّلُ عَنْهُمْ أَحْسَنَ مَا عَمِلُوا وَنَتَجَاوَزُ عَنْ سَيِّئَاتِهِمْ فِي أَصْحَابِ الْجَنَّةِ ۖ وَعْدَ الصِّدْقِ الَّذِي كَانُوا يُوعَدُونَ ﴿١٦﴾

१६) यिनै ती मानिसहरू हुन् जसका हामीले राम्रा कार्यहरू स्वीकार गर्दछौं र जसका पापहरूलाई क्षमा गरिदिने छौं, र यिनै जन्नत वालाहरूमा हुनेछन् । त्यस सत्य वचनको कारण जुन उनीहरूसित गरिएको थियो ।

وَالَّذِي قَالَ لِوَالِدَيْهِ أُفٍّ لَكُمَا أَتَعِدَانِنِي أَنْ أُخْرَجَ وَقَدْ خَلَتِ الْقُرُونُ مِنْ قَبْلِي وَهُمَا يَسْتَغِيثَانِ اللَّهَ وَيْلَكَ آمِنْ إِنَّ وَعْدَ اللَّهِ حَقٌّ فَيَقُولُ مَا هَٰذَا إِلَّا أَسَاطِيرُ الْأَوَّلِينَ ﴿١٧﴾

१७) र त्यो व्यक्ति जसले आफ्ना माता-पितासित भन्यो: "तिमी सित म आजिज भइसकेको छु । तिमीले मलाई यही भनिरहन्छौ कि म मरे पछि फेरि जीवित गरिनेछु, जबकि मभन्दा पहिला पनि धेरै मानिसहरू गुज्रिसकेका छन्" र ती दुवैले अल्लाहसित विन्ति गर्दै भन्दछन्: "अफशोच छ तिम्रो लागि मानिहाल ! निःसन्देह अल्लाहको वाचा सत्य छ ।" किन्तु त्यसले भन्दछ "यी त मात्र पहिलाका मानिसहरूका कथा हुन्" ।

أُولَٰئِكَ الَّذِينَ حَقَّ عَلَيْهِمُ الْقَوْلُ فِي أُمَمٍ قَدْ خَلَتْ مِنْ قَبْلِهِمْ مِنَ الْجِنِّ وَالْإِنْسِ ۖ إِنَّهُمْ كَانُوا خَاسِرِينَ ﴿١٨﴾

१८) तिनीहरू हुन जसको बारेमा (अल्लाहको सजाय) को वचन पूरा हुने भएको छ । यी जिन्न र मानिसको समूहहरूका साथ जो यिनीभन्दा पहिला गुज्रिसकेका छन् । निश्चय नै उनीहरू घाटामा रहे ।

وَلِكُلٍّ دَرَجَٰتٌ مِّمَّا عَمِلُوا۟ ۖ وَلِيُوَفِّيَهُمْ أَعْمَٰلَهُمْ
وَهُمْ لَا يُظْلَمُونَ ١٩

१९) र मानिसहरूले जस्ता कर्म गरेका हुन्छन् सोही अनुरूप प्रत्येकलाई स्थान मिल्नेछ ताकि उनको कार्यको पूरा प्रतिफल मिलोस् र उनीमाथि अत्याचार गरिने छैन ।

وَيَوْمَ يُعْرَضُ ٱلَّذِينَ كَفَرُوا۟ عَلَى ٱلنَّارِ أَذْهَبْتُمْ
طَيِّبَٰتِكُمْ فِى حَيَاتِكُمُ ٱلدُّنْيَا وَٱسْتَمْتَعْتُم بِهَا
فَٱلْيَوْمَ تُجْزَوْنَ عَذَابَ ٱلْهُونِ بِمَا كُنتُمْ
تَسْتَكْبِرُونَ فِى ٱلْأَرْضِ بِغَيْرِ ٱلْحَقِّ
وَبِمَا كُنتُمْ تَفْسُقُونَ ٢٠

२०) र जुन दिन काफिरहरू नर्कको सामु प्रस्तुत गरिनेछन् ! (भनिनेछ) तिमीले आफ्नो असल कार्य संसारिक जीवनमा नै बर्बाद गरिसक्यौ, र त्यसबाट फाइदा पनि उठाइसक्यौ, तसर्थ आज तिमीलाई अपमान जनक सजाय दिइने छ यो यसको दण्ड हो कि तिमी धरतीमा अनाहक घमण्ड गर्ने गर्दथ्यौ र यसकारण कि तिमीले आज्ञाको उल्लंघन गर्दथ्यौ ।

وَٱذْكُرْ أَخَا عَادٍ إِذْ أَنذَرَ قَوْمَهُۥ بِٱلْأَحْقَافِ
وَقَدْ خَلَتِ ٱلنُّذُرُ مِنۢ بَيْنِ يَدَيْهِ وَمِنْ
خَلْفِهِۦٓ أَلَّا تَعْبُدُوٓا۟ إِلَّا ٱللَّهَ إِنِّىٓ أَخَافُ عَلَيْكُمْ
عَذَابَ يَوْمٍ عَظِيمٍ ٢١

२१) र आदको भाइ (हूद)लाई यादगर, जबकि उनले आफ्नो कौमलाई अहक़ाफबाट सावधान गरे, उनीभन्दा पहिला र पछि उनीलाई सावधान गर्नेहरू गुज्रिसकेका छन् कि “तिमी अल्लाह बाहेक अरु कसैको पूजा नगर । मलाई तिम्रो बारेमा एउटा ठूलो दिनको यातनाको भय छ ।”

قَالُوٓا۟ أَجِئْتَنَا لِتَأْفِكَنَا عَنْ ءَالِهَتِنَا فَأْتِنَا
بِمَا تَعِدُنَآ إِن كُنتَ مِنَ ٱلصَّٰدِقِينَ ٢٢

२२) (उनको समूहले) भन्न थाले: कि “के तिमी हाम्रो पासमा यसकारण आएका हौ कि हामीलाई हाम्रा पूज्यहरूबाट विमुख गरिदेऊ ? यदि साँचो हौ भने जुन कुरोबाट

हामीलाई तर्साउँछौ त्यो हामी माथि ल्याइदेऊ ।''

२३) उनले भने: कि ''यसको ज्ञान त मात्र अल्लाहलाई नै छ र म त जुन संदेश दिइएर पठाइएको हूँ त्यो तिमीलाई पुऱ्याई राखेको छु । तर म देख्छु कि तिमीहरू अज्ञानतामा फसिराखेका छौ ।''

قَالَ إِنَّمَا الْعِلْمُ عِندَ اللَّهِ وَأُبَلِّغُكُم مَّا أُرْسِلْتُ بِهِ وَلَٰكِنِّي أَرَاكُمْ قَوْمًا تَجْهَلُونَ ﴿٢٣﴾

२४) अनि जब उनीहरूले सजायलाई बादलको रूपमा उनीहरूका ठाउँतिर आइरहेको देखे, तब भन्नथाले: कि ''यो त बादल हो जसले हामी माथि वर्षा गर्छ,'' (होइन) ''बरु यो त्यो (सजाय) अजाब हो जसको निम्ति तिमीले हतार गर्थ्यौ हवा हो जसमा कष्टदायक यातना छ ।

فَلَمَّا رَأَوْهُ عَارِضًا مُّسْتَقْبِلَ أَوْدِيَتِهِمْ قَالُوا هَٰذَا عَارِضٌ مُّمْطِرُنَا ۚ بَلْ هُوَ مَا اسْتَعْجَلْتُم بِهِ ۖ رِيحٌ فِيهَا عَذَابٌ أَلِيمٌ ﴿٢٤﴾

२५) जसले हरेक वस्तुलाई आफ्नो पालनकर्ताको आदेशले नष्ट गरिदिनेछ ।'' अत: उनीहरू यस्ता भइहाले कि उनीहरूका घरहरू बाहेक अरु केही देखिन्नथ्यो । पापीहरूलाई हामीले यस्तै प्रकारको प्रतिफल दिन्छौं ।

تُدَمِّرُ كُلَّ شَيْءٍ بِأَمْرِ رَبِّهَا فَأَصْبَحُوا لَا يُرَىٰ إِلَّا مَسَاكِنُهُمْ ۚ كَذَٰلِكَ نَجْزِي الْقَوْمَ الْمُجْرِمِينَ ﴿٢٥﴾

२६) नि:सन्देह हामीले (कौमेआदलाई) त्यो सामर्थ्य प्रदान गरेका थियौं, जुन तिमीहरूलाई प्रदान गरेका छैनौं । र हामीले उनीहरूलाई कान, आँखा र हृदय पनि प्रदान गरेका थियौं । तर उनका कान आँखाहरू र उनका

وَلَقَدْ مَكَّنَّاهُمْ فِيمَا إِن مَّكَّنَّاكُمْ فِيهِ وَجَعَلْنَا لَهُمْ سَمْعًا وَأَبْصَارًا وَأَفْئِدَةً فَمَا أَغْنَىٰ عَنْهُمْ سَمْعُهُمْ وَلَا أَبْصَارُهُمْ وَلَا أَفْئِدَتُهُم مِّن شَيْءٍ إِذْ كَانُوا يَجْحَدُونَ بِآيَاتِ اللَّهِ وَحَاقَ بِهِم مَّا كَانُوا بِهِ يَسْتَهْزِئُونَ ﴿٢٦﴾

हृदयहरूले उनीहरूको कुनै काम आएनन् । जब उनीहरूले अल्लाहका आयतहरूलाई नकार्न थाले र जुन कुराको उनीहरूले हाँसो उडाउँथे त्यसैले उनीहरूलाई आइघेर्‍यो ।

२७) निःसन्देह हामीले तिम्रो छरछिमेकका बस्तीहरूलाई नष्ट गर्‍यौं र किसिम-किसिमका निशानीहरू वर्णन गर्‍यौं, ताकि उनीहरू प्रवृत्त होऊन ।

وَلَقَدْ اَهْلَكْنَا مَا حَوْلَكُمْ مِّنَ الْقُرٰى وَصَرَّفْنَا الْاٰيٰتِ لَعَلَّهُمْ يَرْجِعُوْنَ ﴿٢٧﴾

२८) अनि अल्लाहको समीप्य हासिल गर्न जस-जसलाई उनीहरूले अल्लाह बाहेक आफ्ना पूज्य बनाएका थिए । तिनीहरूले उनीहरूको मद्दत किन गरेनन् ? बरु उनीहरू तिनीहरूका अगाडिबाट हराइहाले । र (वास्तवमा) यो उनीहरूको मात्र मिथ्यारोपण थियो र झूठो आरोप थियो ।

فَلَوْلَا نَصَرَهُمُ الَّذِيْنَ اتَّخَذُوْا مِنْ دُوْنِ اللّٰهِ قُرْبَانًا اٰلِهَةً ۭ بَلْ ضَلُّوْا عَنْهُمْ ۚ وَذٰلِكَ اِفْكُهُمْ وَمَا كَانُوْا يَفْتَرُوْنَ ﴿٢٨﴾

२९) र यादगर जब हामीले जिन्नहरूको एक समूहलाई तिमीतिर प्रवृत्त गर्‍यौं ताकि उनीहरूले कुरआन सुनुन्, तब जब उनीहरू नबीको पासमा आए त (आपसमा) भन्न थाले कि “चुप लाग”, अनि जब त्यो (कुरआनको पाठ) पूरा भयो त उनीहरू आफ्ना जाति-बन्धुलाई सावधान गर्न त्यतातिर फर्के ।

وَاِذْ صَرَفْنَآ اِلَيْكَ نَفَرًا مِّنَ الْجِنِّ يَسْتَمِعُوْنَ الْقُرْاٰنَ ۚ فَلَمَّا حَضَرُوْهُ قَالُوْٓا اَنْصِتُوْا ۚ فَلَمَّا قُضِيَ وَلَّوْا اِلٰى قَوْمِهِمْ مُّنْذِرِيْنَ ﴿٢٩﴾

३०) भन्न थाले कि “हे मेरो सम्प्रदाय । हामीले निःसन्देह त्यो पुस्तक सुनेका छौं जुन मूसा (अ.) पछि अवतरित

قَالُوْا يٰقَوْمَنَآ اِنَّا سَمِعْنَا كِتٰبًا اُنْزِلَ مِنْۢ بَعْدِ مُوْسٰى مُصَدِّقًا لِّمَا بَيْنَ يَدَيْهِ يَهْدِيْٓ اِلَى الْحَقِّ وَاِلٰى طَرِيْقٍ مُّسْتَقِيْمٍ ﴿٣٠﴾

गरिएको छ, जुन आफू भन्दा अघिका पुस्तकहरूको प्रमाणिकरण गर्द छ। (जुन) सत्य धर्मको र सोझो मार्गको निर्देशन दिन्छ।

يٰقَوْمَنَآ اَجِيْبُوْا دَاعِيَ اللّٰهِ وَاٰمِنُوْا بِهٖ يَغْفِرْ لَكُمْ مِّنْ
ذُنُوْبِكُمْ وَيُجِرْكُمْ مِّنْ عَذَابٍ اَلِيْمٍ ﴿٣١﴾

३१) हे मेरो कौम ! अल्लाहतिर आव्हान गर्नेवालाको कुरा मान, र उस माथि ईमान ल्याऊ। अनि अल्लाहले तिमीहरूको त्रुटिहरू क्षमा गरिदिने छ र तिमीलाई कष्टदायक दण्डबाट मुक्ति दिनेछ।

وَمَنْ لَّا يُجِبْ دَاعِيَ اللّٰهِ فَلَيْسَ بِمُعْجِزٍ فِى الْاَرْضِ
وَلَيْسَ لَهٗ مِنْ دُوْنِهٖٓ اَوْلِيَآءُ ؕ اُولٰٓئِكَ فِيْ ضَلٰلٍ مُّبِيْنٍ ﴿٣٢﴾

३२) र जसले अल्लाहको आमन्त्रणकर्ताको आमन्त्रण स्वीकार गर्ने छैन त उसले धरतीमा (नियन्त्रणबाट) कतै भागेर उम्कन सक्ने छैन र अल्लाह बाहेक उसको कोही संरक्षक हुनेछैन। यस्ता मानिसहरूले खुल्लम- खुल्ला मार्ग विचलनमा छन्।"

اَوَلَمْ يَرَوْا اَنَّ اللّٰهَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ
وَلَمْ يَعْيَ بِخَلْقِهِنَّ بِقٰدِرٍ عَلٰٓى اَنْ يُّحْيِۦَ الْمَوْتٰى ؕ
بَلٰٓى اِنَّهٗ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ﴿٣٣﴾

३३) के उनीहरूले देखेनन् कि जुन अल्लाहले आकाशहरू र धरतीलाई सृष्टि गऱ्यो र उनीहरूको सृष्टि गर्नबाट थाकेन, त्यो निःसन्देह मृतकहरूलाई पनि जीवित पार्न सामर्थ्यवान छ ? किन नहोस ऊ निःसन्देह हरेक वस्तु माथि सामर्थ्यवान छ।

وَيَوْمَ يُعْرَضُ الَّذِيْنَ كَفَرُوْا عَلَى النَّارِ ؕ اَلَيْسَ هٰذَا
بِالْحَقِّ ؕ قَالُوْا بَلٰى وَرَبِّنَا ؕ قَالَ فَذُوْقُوا الْعَذَابَ
بِمَا كُنْتُمْ تَكْفُرُوْنَ ﴿٣٤﴾

३४) र जुनदिन ती मानिसहरू, जसले इन्कार गरे, नर्कको अगाडि प्रस्तुत गरिनेछन्, (भनिनेछ) "के यो सत्य होइन ?" उनीहरूले भन्नेछन्: कि

हाम्रो पालनकर्ताको कसम !" (यो सत्य हो) उसले भन्नेछ- "त अब यातनाको स्वाद चाख, त्यस इन्कारको परिणामस्वरूप जो तिमीहरूले गर्ने गर्दथ्यौ ।"

३५) अतः (हे मोहम्मद स.अ !) धैर्यधारण गर, जुन किसिमले संकल्पवान रसूलहरूले धैर्य गरे । र उनीहरूको निम्ति यातनाको निम्ति हतार नगर । जुनदिन यिनीहरूले त्यस कुरालाई देख्नेछन्, जसको उनीहरूसित वाचा गरिन्छ , (तब महसूस गर्नेछन्) कि मानौं संसारमा दिनको एकछिनका लागि मात्र बसेका थिए । यो कुरआन सन्देश हो, तसर्थ (अब) तिनीहरू नै नष्ट हुनेछन् जो अवज्ञाकारी थिए ।

فَاصْبِرْ كَمَا صَبَرَ أُولُوا الْعَزْمِ مِنَ الرُّسُلِ وَلَا تَسْتَعْجِل لَّهُمْ ۚ كَأَنَّهُمْ يَوْمَ يَرَوْنَ مَا يُوعَدُونَ لَمْ يَلْبَثُوا إِلَّا سَاعَةً مِّن نَّهَارٍ ۚ بَلَاغٌ ۚ فَهَلْ يُهْلَكُ إِلَّا الْقَوْمُ الْفَاسِقُونَ ﴿٣٥﴾



# सूरतु मोहम्मद-४७



सूरतु मोहम्मद मदनी हो यसमा ३८ आयतहरू र ४ रुकूअ्हरू छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ**

الَّذِينَ كَفَرُوا وَصَدُّوا عَنْ سَبِيلِ اللَّهِ أَضَلَّ أَعْمَالَهُمْ ①

१) जसले इन्कार गरे र (अरु व्यक्तिलाई) अल्लाहको मार्गबाट रोके, अल्लाहले उनीहरूका कर्महरूलाई नष्ट पारिदियो ।

وَالَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ وَآمَنُوا بِمَا نُزِّلَ عَلَىٰ مُحَمَّدٍ وَهُوَ الْحَقُّ مِنْ رَبِّهِمْ كَفَّرَ عَنْهُمْ سَيِّئَاتِهِمْ وَأَصْلَحَ بَالَهُمْ ②

२) र जसले विश्वास गरे र असल कर्म गरिरहे र जुन (किताब) मोहम्मद(स.अ.) माथि अवतरित भएको छ, त्यसलाई मानिराखे र त्यो नै उनको पालनकर्ताबाट सत्य धर्म हो । त अल्लाहले उनीहरूका गुनाहलाई हटाइदियो र उनीहरूको अवस्था सुधारिदियो ।

ذَٰلِكَ بِأَنَّ الَّذِينَ كَفَرُوا اتَّبَعُوا الْبَاطِلَ وَأَنَّ الَّذِينَ آمَنُوا اتَّبَعُوا الْحَقَّ مِنْ رَبِّهِمْ كَذَٰلِكَ يَضْرِبُ اللَّهُ لِلنَّاسِ أَمْثَالَهُمْ ③

३) यो यस कारण हो कि जुन मानिसहरूले इन्कार गरे उनीहरूले असत्यको अनुशरण गरे, र ईमान ल्याउनेहरूले सत्यमा हिंडे, जो उनको पालकर्ताको तर्फबाट छ । यसै प्रकार अल्लाहले मानिसहरूको निम्ति उनीहरूको उदाहरण वर्णन गर्दछ ।

فَإِذَا لَقِيتُمُ الَّذِينَ كَفَرُوا فَضَرْبَ الرِّقَابِ حَتَّىٰ إِذَا أَثْخَنْتُمُوهُمْ فَشُدُّوا الْوَثَاقَ فَإِمَّا مَنًّا بَعْدُ وَإِمَّا فِدَاءً حَتَّىٰ تَضَعَ الْحَرْبُ أَوْزَارَهَا ذَٰلِكَ وَلَوْ يَشَاءُ اللَّهُ لَانْتَصَرَ مِنْهُمْ وَلَٰكِنْ لِيَبْلُوَ بَعْضَكُمْ

४) अत: जब इन्कार गर्नेहरूसित तिम्रो भिडन्त हुन्छ त (उनीहरूका) गर्दन छिनालिदेऊ यहाँसम्म कि जब उनीहरूलाई राम्ररी थिचि सकेपछि

بِبَعْضٍ ۗ وَالَّذِينَ قُتِلُوا فِي سَبِيلِ اللَّهِ فَلَن يُضِلَّ أَعْمَالَهُمْ ﴿٤﴾

(बाँच्नेहरूलाई) मजबूतसँग बाँधेर पक्राउ गर, अनि पछि या त उपकार गरी छाडिदेऊ अथवा दण्ड दिएर यहाँसम्म कि शत्रुले लडाईको हतियार आफ्नो हातबाट राखिदिओस् । यो (हुकुम याद राख) यदि अल्लाहले चाहेको भए (अन्य प्रकारले) उनीहरूसित स्वयम् प्रतिशोध लिइहाल्थ्यो । तर उसले चाह्यो कि तिम्रो एउटाको अर्कोसित परीक्षा लेओस् । जुन मानिसहरू अल्लाहको बाटोमा मारिए उनका कर्महरूलाई कहिल्यै खेर फालिनेछैन ।

سَيَهْدِيهِمْ وَيُصْلِحُ بَالَهُمْ ﴿٥﴾

५) उनीहरूलाई (सोझो) बाटो देखाउने छ र उनको अवस्था ठीक पार्नेछ ।

وَيُدْخِلُهُمُ الْجَنَّةَ عَرَّفَهَا لَهُمْ ﴿٦﴾

६) र उनीहरूलाई त्यस स्वर्गमा जससित उनीहरूलाई परिचित गराइसकेको छ, प्रवेश गर्ने छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن تَنصُرُوا اللَّهَ يَنصُرْكُمْ وَيُثَبِّتْ أَقْدَامَكُمْ ﴿٧﴾

७) हे ईमानवालाहरू ! यदि तिमिले अल्लाहको धर्मको मद्दत गर्नेछौं भने उसले पनि तिम्रो मद्दत गर्नेछ र तिम्रो पाइलालाई सुदृढ बनाउने छ ।

وَالَّذِينَ كَفَرُوا فَتَعْسًا لَّهُمْ وَأَضَلَّ أَعْمَالَهُمْ ﴿٨﴾

८) र जो काफिर भए । उनीहरू कै निम्ति विनाश छ र अल्लाह उनीहरूका कर्महरूलाई नष्ट पारिदिनेछ ।

ذَٰلِكَ بِأَنَّهُمْ كَرِهُوا مَا أَنزَلَ اللَّهُ فَأَحْبَطَ أَعْمَالَهُمْ ﴿٩﴾

९) यो यसकारण कि अल्लाहले जुन कुरो अवतरित गर्‍यो, उनीहरूले त्यसलाई अप्रिय ठाने, तब अल्लाहले उनीहरूको कर्महरूलाई व्यर्थ पारिदियो ।

१०) के उनीहरूले धरतीमा हिंड्डुल गर्दै यो देखेनन् कि जुन मानिसहरू उनीहरूभन्दा पहिला थिए उनीहरूको परिणाम कस्तो भयो ? अल्लाहले उनीहरूलाई नष्ट पारिदियो इन्कार गर्नेहरूलाई यस्तै सजाय हुनेछ ।

أَفَلَمْ يَسِيرُوا فِي الْأَرْضِ فَيَنظُرُوا كَيْفَ كَانَ عَاقِبَةُ الَّذِينَ مِن قَبْلِهِمْ ۚ دَمَّرَ اللَّهُ عَلَيْهِمْ ۖ وَلِلْكَافِرِينَ أَمْثَالُهَا ﴿١٠﴾

११) यो यसकारण कि जो मोमिन छन् उनीहरूको संरक्षक स्वयम् अल्लाह हो र काफिरहरूको कोही संरक्षक छैन ।

ذَٰلِكَ بِأَنَّ اللَّهَ مَوْلَى الَّذِينَ آمَنُوا وَأَنَّ الْكَافِرِينَ لَا مَوْلَىٰ لَهُمْ ﴿١١﴾

१२) जसले ईमान ल्याए, र असल कर्म गरे उनीहरूलाई अल्लाहले निःसन्देह यस्तो बगैंचाहरूमा प्रवेश गराउने छ जसमुनि नहरहरू बगिरहेछन् । र ती मानिसहरू जसले इन्कार गरे उनीहरूले दुनियाको नै फाइदा उठाइरहेछन् । र पशु जस्तै खाई रहन्छन् र उनीहरूको असली बासस्थान नर्क हो ।

إِنَّ اللَّهَ يُدْخِلُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ ۖ وَالَّذِينَ كَفَرُوا يَتَمَتَّعُونَ وَيَأْكُلُونَ كَمَا تَأْكُلُ الْأَنْعَامُ وَالنَّارُ مَثْوًى لَّهُمْ ﴿١٢﴾

१३) हामीले कति बस्तीलाई जुन बलमा तिम्रो गाउँ बस्तीभन्दा बढी थिए जसबाट तिमीलाई निकालेको हो उनीहरूको विनाश गरिदिएका छौं, जसका सहायक कोही पनि भएन ।

وَكَأَيِّن مِّن قَرْيَةٍ هِيَ أَشَدُّ قُوَّةً مِّن قَرْيَتِكَ الَّتِي أَخْرَجَتْكَ أَهْلَكْنَاهُمْ فَلَا نَاصِرَ لَهُمْ ﴿١٣﴾

१४) तसर्थ त्यो व्यक्ति जो आफ्नो पालनकर्ताको तर्फबाट प्रमाणमा होस्, त्यस व्यक्ति जस्तो हुन सक्छ जसको लागि उसको नराम्रा कार्यहरू सुसज्जित गरिदिइएको छ । र ऊ

أَفَمَن كَانَ عَلَىٰ بَيِّنَةٍ مِّن رَّبِّهِ كَمَن زُيِّنَ لَهُ سُوءُ عَمَلِهِ وَاتَّبَعُوا أَهْوَاءَهُم ﴿١٤﴾

आफ्नो जैविक इच्छाको अधीनस्थ होस् ।

१५) यस स्वर्गको विशेषता जसको परहेजगारहरूलाई वचन दिइएको छ यो हो कि यसमा पानीका नहरहरू छन् जुनकि प्रदुषित हुँदैनन् । र यस्ता दूधका नहरहरू हुनेछन् जसको स्वादमा अलिकति पनि अन्तर परेको हुँदैन र यस्ता पेय पदार्थका नहरहरू हुनेछन् जसले पिउनेहरूलाई अत्यन्त आनन्द प्रदान गर्नेछन् । र शुद्ध मधुको नहरहरू छन् र उनीहरूका निम्ति त्यहाँ हरेक प्रकारका फल हुनेछन्, र उनको पालनकर्ताबाट क्षमा छ । (के यी संयमीहरू) उनीहरू सरह हुन सक्दछन् जो सधैं नर्कमा रहनेछन् ? र जसलाई उम्लिराखेको पानी खुवाइने छ जसले उनको आन्द्राहरूलाई छिया-छिया पारिदिनेछ ।

مَثَلُ الْجَنَّةِ الَّتِي وُعِدَ الْمُتَّقُونَ ۖ فِيهَا أَنْهَارٌ مِّن مَّاءٍ غَيْرِ آسِنٍ وَأَنْهَارٌ مِّن لَّبَنٍ لَّمْ يَتَغَيَّرْ طَعْمُهُ وَأَنْهَارٌ مِّنْ خَمْرٍ لَّذَّةٍ لِّلشَّارِبِينَ وَأَنْهَارٌ مِّنْ عَسَلٍ مُّصَفًّى ۖ وَلَهُمْ فِيهَا مِن كُلِّ الثَّمَرَاتِ وَمَغْفِرَةٌ مِّن رَّبِّهِمْ ۖ كَمَنْ هُوَ خَالِدٌ فِي النَّارِ وَسُقُوا مَاءً حَمِيمًا فَقَطَّعَ أَمْعَاءَهُمْ ﴿١٥﴾

१६) र उनीहरूमध्ये (केही यस्ता पनि छन्) जसले तिमीतिर कान थापेको हुन्छन् यहाँसम्म कि (सबै कुरा सुन्दछन् तर) जब तिम्रो पासबाट निस्केर जान्छन् तब जुन मानिसहरूलाई ज्ञान छ उनीसित सोध्छन्, उनले अहिले के भनेका छन्? यी नै मानिसहरू हुन् जसका हृदयहरूमा अल्लाहले मोहर (छाप) लगाइदिएको छ र उनीहरूले आफ्ना इच्छाहरूको पछि हिंडिराखेका छन् ।

وَمِنْهُم مَّن يَسْتَمِعُ إِلَيْكَ حَتَّىٰ إِذَا خَرَجُوا مِنْ عِندِكَ قَالُوا لِلَّذِينَ أُوتُوا الْعِلْمَ مَاذَا قَالَ آنِفًا ۚ أُولَٰئِكَ الَّذِينَ طَبَعَ اللَّهُ عَلَىٰ قُلُوبِهِمْ وَاتَّبَعُوا أَهْوَاءَهُمْ ﴿١٦﴾

وَالَّذِيْنَ اهْتَدَوْا زَادَهُمْ هُدًى وَّاٰتٰىهُمْ تَقْوٰىهُمْ ﴿١٧﴾

१७) र जुन मानिसहरू मार्गदर्शन प्राप्त छन् । अल्लाह उनीहरूलाई झन् बढी मार्गदर्शन प्रदान गर्दछ र उनीहरूलाई बढी संयम प्रदान गर्दछ ।

فَهَلْ يَنْظُرُوْنَ اِلَّا السَّاعَةَ اَنْ تَاْتِيَهُمْ بَغْتَةً ۚ فَقَدْ جَآءَ اَشْرَاطُهَا ۚ فَاَنّٰى لَهُمْ اِذَا جَآءَتْهُمْ ذِكْرٰىهُمْ ﴿١٨﴾

१८) अब के उनीहरूले कयामतको प्रतिक्षा गरिराखेका छन् कि कयामत उनीहरूमाथि एक्कासी आइहालोस्, निःसन्देह उसको लक्षणहरू त आइसकेका छने, फेरि जब कयामत आइपुग्छ उनीहरूलाई उपदेश प्राप्त गर्नमिल्दैन ।

فَاعْلَمْ اَنَّهٗ لَآ اِلٰهَ اِلَّا اللّٰهُ وَاسْتَغْفِرْ لِذَنْۢبِكَ وَلِلْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ۗ وَاللّٰهُ يَعْلَمُ مُتَقَلَّبَكُمْ وَمَثْوٰىكُمْ ﴿١٩﴾

१९) अतः (हे नबी स.) तपाई यकीन गर्नुस् कि अल्लाह बाहेक कोही सत्य पुज्य छैन, र आफ्ना त्रुटिहरूको क्षमाको लागि याचना गर्नुस्, र मोमिन पुरुषहरू र मोमिन स्त्रीहरूको निम्ति पनि । र अल्लाहले तपाईहरूको हिंड्डुल गर्ने र बासस्थानहरूलाई राम्ररी जान्दछ ।

وَيَقُوْلُ الَّذِيْنَ اٰمَنُوْا لَوْلَا نُزِّلَتْ سُوْرَةٌ ۚ فَاِذَآ اُنْزِلَتْ سُوْرَةٌ مُّحْكَمَةٌ وَّذُكِرَ فِيْهَا الْقِتَالُ ۙ رَاَيْتَ الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ يَّنْظُرُوْنَ اِلَيْكَ نَظَرَ الْمَغْشِيِّ عَلَيْهِ مِنَ الْمَوْتِ ۗ فَاَوْلٰى لَهُمْ ﴿٢٠﴾

२०) र मोमिनहरूले भन्दछन्ः कि "कुनै सूरः किन अवतरित गरिएन ? तर जब कुनै प्रष्ट अर्थ भएको सूरः अवतरित हुन्छ र त्यसमा जिहादको वर्णन हुन्छ, त तपाइले देखनु हुन्छ कि जुन मानिसहरूको हृदयमा (कपटको) रोग छ तिनिहरू तपाई तिर यसरी देख्दछन्, जस्तो त्यस मानिसको दृष्टि हुन्छ जसमाथि

मृत्युको मुर्छा छाएको छ । उनीहरूको निम्ति बहुतै राम्रो थियो ।

طَاعَةٌ وَّقَوْلٌ مَّعْرُوْفٌ فَاِذَا عَزَمَ الْاَمْرُ فَلَوْ صَدَقُوا اللّٰهَ لَكَانَ خَيْرًا لَّهُمْ ﴿٢١﴾

२१) आज्ञापालन र राम्रो कुरा भन्नु । अनि जब कुरा निश्चित भइहाल्यो तब अल्लाहसँग सत्यका साथरहेमा उनीहरू कै निम्ति राम्रो हुनेथियो ।

فَهَلْ عَسَيْتُمْ اِنْ تَوَلَّيْتُمْ اَنْ تُفْسِدُوْا فِي الْاَرْضِ وَتُقَطِّعُوْٓا اَرْحَامَكُمْ ﴿٢٢﴾

२२) (हे मुनाफिकहरू !) तिम्रो बारेमा आश्चर्य छैन कि यदि तिमीलाई सत्ता प्राप्त भइहाल्छ भने तिमीहरूले धरतीमा दंगाको सृजना गर्न थाल्दछौ, र रिश्ता नाता सबै तोडि दिन्छौ ।

اُولٰٓئِكَ الَّذِيْنَ لَعَنَهُمُ اللّٰهُ فَاَصَمَّهُمْ وَاَعْمٰٓى اَبْصَارَهُمْ ﴿٢٣﴾

२३) यिनै ती मानिसहरू हुन् जसलाई अल्लाहले तिरस्कृत गरेको छ, र उनका कानहरूलाई बहिरो र (उनका) आँखाहरूबाट देख्ने क्षमता खोसी दिएको छ ।

اَفَلَا يَتَدَبَّرُوْنَ الْقُرْاٰنَ اَمْ عَلٰى قُلُوْبٍ اَقْفَالُهَا ﴿٢٤﴾

२४) त के उनीहरूले कुरआनमा सोचविचार गर्दैनन्, वा उनीहरूको हृदयमा ताल्चा लागेका छन् ।

اِنَّ الَّذِيْنَ ارْتَدُّوْا عَلٰٓى اَدْبَارِهِمْ مِّنْ بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْهُدَى الشَّيْطٰنُ سَوَّلَ لَهُمْ وَاَمْلٰى لَهُمْ ﴿٢٥﴾

२५) निःसन्देह जुन मानिसहरू मार्गदर्शन भएपछि पनि पिठ्यू फर्काई गइहाले, शैतानले उनको लागि उनको कामलाई अत्यन्त राम्रो गरेर देखायो र उनीहरूलाई अवसर दिराखेको छ ।

ذٰلِكَ بِاَنَّهُمْ قَالُوْا لِلَّذِيْنَ كَرِهُوْا مَا نَزَّلَ اللّٰهُ سَنُطِيْعُكُمْ فِيْ بَعْضِ الْاَمْرِ وَاللّٰهُ يَعْلَمُ اِسْرَارَهُمْ ﴿٢٦﴾

२६) यो यसकारण कि उनीहरूले ती मानिसहरूसित, जसले अल्लाहबाट अवतरित कुरालाई अरुचिकर ठान्थे भने कि हामीले केही मामिलामा

तिम्रो कुरा मानिहाल्नेछौ । र अल्लाहले उनीहरूका गोप्य कुरा राम्ररी जान्दछ ।

فَكَيْفَ إِذَا تَوَفَّتْهُمُ الْمَلَٰٓئِكَةُ يَضْرِبُونَ وُجُوهَهُمْ وَأَدْبَٰرَهُمْ ﴿٢٧﴾

२७) अनि त्यस बेला (उनीहरूको) कस्तो (अवस्था) हुनेछ जसबेला फरिश्ताहरूले उनीहरूका प्राण निकाल्दै उनीहरूको अनुहार र पिठ्यूमा प्रहार गर्ने छन् ।

ذَٰلِكَ بِأَنَّهُمُ اتَّبَعُوا مَآ أَسْخَطَ اللَّهَ وَكَرِهُوا رِضْوَٰنَهُۥ فَأَحْبَطَ أَعْمَٰلَهُمْ ﴿٢٨﴾

२८) यो यसकारण कि उनीहरूले त्यस कुराको अनुशरण गरे जुनकि अल्लाहलाई अप्रसन्न गरोस् र उनीहरूले उसको प्रसन्नतालाई रुचाएनन् अनि उसले पनि उनीहरूको कर्महरूलाई नष्ट गरिदियो ।

أَمْ حَسِبَ الَّذِينَ فِى قُلُوبِهِم مَّرَضٌ أَن لَّن يُخْرِجَ اللَّهُ أَضْغَٰنَهُمْ ﴿٢٩﴾

२९) के जुन मानिसहरूको हृदयमा रोग छ यो ठानेकाछन् कि अल्लाहले उनीहरूको दोषलाई प्रकट नै गर्ने छैन ?

وَلَوْ نَشَآءُ لَأَرَيْنَٰكَهُمْ فَلَعَرَفْتَهُم بِسِيمَٰهُمْ ۚ وَلَتَعْرِفَنَّهُمْ فِى لَحْنِ الْقَوْلِ ۚ وَاللَّهُ يَعْلَمُ أَعْمَٰلَكُمْ ﴿٣٠﴾

३०) र यदि हामीले चाहेको भए उनीहरू सबैलाई तिमीलाई देखाई दिन्थ्यौ । अनि तिमीले उनीहरूलाई उनीहरूको अनुहारबाट चिनीहाल्थ्यौ, निश्चित रूपले तिमीले उनीहरूलाई उनको कुराकानी गर्ने तौर तरिकाबाट अवश्य नै चिनीहाल्ने छौ । अल्लाहले तिम्रा कर्महरूलाई जान्दछ ।

وَلَنَبْلُوَنَّكُمْ حَتَّىٰ نَعْلَمَ الْمُجَٰهِدِينَ مِنكُمْ وَالصَّٰبِرِينَ وَنَبْلُوَا۟ أَخْبَارَكُمْ ﴿٣١﴾

३१) र निःसन्देह हामीले तिमीहरूको परीक्षा लिनेछौं ताकि तिमीमध्ये धर्मयुद्ध गर्नेवाला र संतोष

गर्नेवालाहरूलाई प्रकट गरौं र हामीले तिम्रो अवस्थाहरूको पनि जाँच गर्न सकौं ।

३२) निःसन्देह जुन मान्छेहरूले कुफ्र गरे र अल्लाहको मार्गबाट मान्छेहरूलाई रोके र रसूलहरूको विरोध गरे, जबकि उनीहरूमाथि सत्य स्पष्ट भइसकेको थियो उनी कहिल्यै पनि अल्लाहको केही बिगार गर्न सक्ने छैनन् । र शीघ्र उनीहरूका कर्मलाई नष्ट गरिदिनेछ ।

إِنَّ الَّذِينَ كَفَرُوا وَصَدُّوا عَن سَبِيلِ اللَّهِ وَشَاقُّوا الرَّسُولَ مِن بَعْدِ مَا تَبَيَّنَ لَهُمُ الْهُدَىٰ لَن يَضُرُّوا اللَّهَ شَيْئًا وَسَيُحْبِطُ أَعْمَالَهُمْ ﴿٣٢﴾

३३) हे ईमानवालाहरू ! अल्लाहको आज्ञापालन गर, र रसूलले भनेको मान र आफ्ना कर्महरूलाई नष्ट नपार ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا أَطِيعُوا اللَّهَ وَأَطِيعُوا الرَّسُولَ وَلَا تُبْطِلُوا أَعْمَالَكُمْ ﴿٣٣﴾

३४) निश्चय नै जसले इन्कार गरे र अल्लाहको मार्गबाट अरुलाई रोके र फेरि कुफ्र गरेको अवस्थामा मरिहाले, विश्वास गर उनीहरूलाई अल्लाहले कहिल्यै क्षमा गर्ने छैन ।

إِنَّ الَّذِينَ كَفَرُوا وَصَدُّوا عَن سَبِيلِ اللَّهِ ثُمَّ مَاتُوا وَهُمْ كُفَّارٌ فَلَن يَغْفِرَ اللَّهُ لَهُمْ ﴿٣٤﴾

३५) अतः यस्तो नहोस् कि तिमीले हिम्मत हारेर सम्झौताको निमन्त्रणा गर्न थाल, जबकि तिमी नै उच्च र प्रभावि छौ । र अल्लाह तिम्रो साथमा छ, र यो असम्भव छ कि उसले तिम्रा कर्मलाई व्यर्थ गरोस् ।

فَلَا تَهِنُوا وَتَدْعُوا إِلَى السَّلْمِ وَأَنتُمُ الْأَعْلَوْنَ وَاللَّهُ مَعَكُمْ وَلَن يَتِرَكُمْ أَعْمَالَكُمْ ﴿٣٥﴾

३६) वास्तवमा यो सांसारिक जीवन त मात्र खेल, तमाशा हो । र यदि तिमी ईमान ल्याउँछौ र संयम

إِنَّمَا الْحَيَاةُ الدُّنْيَا لَعِبٌ وَلَهْوٌ وَإِن تُؤْمِنُوا وَتَتَّقُوا يُؤْتِكُمْ أُجُورَكُمْ وَلَا يَسْأَلْكُمْ أَمْوَالَكُمْ ﴿٣٦﴾

अपनाउँछौ भने अल्लाहले तिमीलाई प्रतिफल दिनेछ। र उसले तिमीसँग तिम्रो धन माँग्दैन।

إِن يَسْـَٔلْكُمُوهَا فَيُحْفِكُمْ تَبْخَلُوا وَيُخْرِجْ أَضْغَانَكُمْ ﴿٣٧﴾

३७) यदि उसले तिमीसँग तिम्रो धन माँग्छ र बलपूर्वक माँग्छ भने तिमी ऊसँग कञ्जूसी गर्ने छौ, र त्यो तिम्रो छलछाम प्रकट गरिदिनेछ

هَٰٓأَنتُمْ هَٰٓؤُلَآءِ تُدْعَوْنَ لِتُنفِقُوا فِى سَبِيلِ ٱللَّهِ فَمِنكُم مَّن يَبْخَلُ ۖ وَمَن يَبْخَلْ فَإِنَّمَا يَبْخَلُ عَن نَّفْسِهِۦ ۚ وَٱللَّهُ ٱلْغَنِىُّ وَأَنتُمُ ٱلْفُقَرَآءُ ۚ وَإِن تَتَوَلَّوْا يَسْتَبْدِلْ قَوْمًا غَيْرَكُمْ ثُمَّ لَا يَكُونُوٓا أَمْثَٰلَكُم ﴿٣٨﴾

३८) सावधान ! तिमी ती मान्छे हौ कि अल्लाहको मार्गमा खर्च गर्नका लागि बोलाइन्छौ त तिमीहरू मध्येबाट केही कञ्जूसी गर्न थाल्छन् र जसले कञ्जूस्याई गर्दछ उसले त वास्तवमा आफ्नो ज्यानसँग कञ्जूस्यायी गर्दछ। अल्लाह त दाता छ तिमी भिखारी, र यदि तिमी मुँख फर्काइहाल त त्यो तिम्रो सट्टा अर्को कौमलाई ल्याइदिनेछ। जो फेरि तिमी जस्ता हुँदैनन्।



# सूरतुल् फ़त्ह-४८




सूरतुल् फ़त्ह मदनी हो यसमा २९ आयतहरू र ४ रुकूअ्हरू छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِنَّا فَتَحْنَا لَكَ فَتْحًا مُبِينًا ①

१) (हे मोहम्मद स. !) निःसन्देह हामीले तपाईलाई एउटा स्पष्ट विजय प्रदान गरेका छौं ।

لِيَغْفِرَ لَكَ اللَّهُ مَا تَقَدَّمَ مِنْ ذَنْبِكَ وَمَا تَأَخَّرَ وَيُتِمَّ نِعْمَتَهُ عَلَيْكَ وَيَهْدِيَكَ صِرَاطًا مُسْتَقِيمًا ②

२) ताकि अल्लाहले तपाईका अघिल्ला र पछिल्ला गलतीहरू क्षमा गरिदेओस् र तपाईमाथि आफ्नो अनुकम्पा पूर्ण गरिदेओस्, र तपाईलाई सोझो मार्गमा हिडाओस् ।

وَيَنْصُرَكَ اللَّهُ نَصْرًا عَزِيزًا ③

३) र तपाईलाई एउटा प्रभावकारी सहायता गरोस् ।

هُوَ الَّذِي أَنْزَلَ السَّكِينَةَ فِي قُلُوبِ الْمُؤْمِنِينَ لِيَزْدَادُوا إِيمَانًا مَعَ إِيمَانِهِمْ ۗ وَلِلَّهِ جُنُودُ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَكَانَ اللَّهُ عَلِيمًا حَكِيمًا ④

४) उही हो जसले ईमानवालाहरूको हृदयमा संतोष र शान्ति प्रदान गऱ्यो ताकि आफ्नो ईमानको साथै उनीहरूले अरु ईमानको अभिवृद्धि गरुन, र आकाशहरू र धरतीका सबै फौज अल्लाह कै हो र अल्लाह सर्वज्ञ, तत्वदर्शी छ ।

لِيُدْخِلَ الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا وَيُكَفِّرَ عَنْهُمْ سَيِّئَاتِهِمْ ۚ وَكَانَ ذَٰلِكَ عِنْدَ اللَّهِ فَوْزًا عَظِيمًا ⑤

५) ताकि उसले मोमिन पुरुषहरू र मोमिन स्त्रीहरूलाई यस्ता बागहरूमा प्रवेश गराओस् जसका मुनि नहरहरू बगिराखेका छन् । जहाँ उनीहरू सधैं रहनेछन् र उनीहरूबाट उनका

पापहरू हटाइदेओस्, र यो अल्लाहकहाँ ठूलो सफलता हो ।

६) र ताकि कप्टाचारी पुरुषहरू र कप्टाचारी स्त्रीहरू र मुशिरक पुरुषहरू र मुशिरक (बहुदेववादी) स्त्रीहरूलाई सजाय देओस् जसले अल्लाहको बारेमा गलत धारणा राख्दछन् । उनीमाथि नराम्रो घेरा छ । अल्लाह उनीसँग रिसायो र उनलाई तिरस्कृत गऱ्यो र उनीहरूको निम्ति दोजख (नर्क) तयार गऱ्यो र त्यो बहुतै नराम्रो ठाउँ हो ।

وَّيُعَذِّبَ الْمُنٰفِقِيْنَ وَالْمُنٰفِقٰتِ وَالْمُشْرِكِيْنَ وَالْمُشْرِكٰتِ الظَّآنِّيْنَ بِاللّٰهِ ظَنَّ السَّوْءِ ۗ عَلَيْهِمْ دَآئِرَةُ السَّوْءِ ۚ وَغَضِبَ اللّٰهُ عَلَيْهِمْ وَلَعَنَهُمْ وَاَعَدَّ لَهُمْ جَهَنَّمَ ۗ وَسَآءَتْ مَصِيْرًا ۝٦

७) र आकाशहरू र धरतीका सम्पूर्ण लावालस्करहरू अल्लाहकैलागि हुन् र अल्लाह अधिपत्यशाली, अत्यन्त तत्वदर्शी छ ।

وَلِلّٰهِ جُنُوْدُ السَّمٰوٰتِ وَالْاَرْضِ ۗ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ۝٧

८) र हामीले (हे मोहम्मद स.अ. !) निःसन्देह तपाईलाई गवाही दिनेवाला र शुभ सूचना दिनेवाला र सचेतकर्ता बनाएर पठाएका छौं ।

اِنَّآ اَرْسَلْنٰكَ شَاهِدًا وَّمُبَشِّرًا وَّنَذِيْرًا ۝٨

९) ताकि (मुसलमानहरू !) तिमीहरूले अल्लाहमा र उसको रसूलमाथि ईमान ल्याऊ, उसको मद्दत गर, र उसको आदर गर र अल्लाहको पवित्रताको गुणगान गर, बिहान र बेलुका ।

لِّتُؤْمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ وَتُعَزِّرُوْهُ وَتُوَقِّرُوْهُ ۗ وَتُسَبِّحُوْهُ بُكْرَةً وَّاَصِيْلًا ۝٩

१०) जो-जो तपाईसित 'बैअत' (आज्ञापालनको प्रतिज्ञा) गर्दछन् उनीहरू निःसन्देह अल्लाहसित 'बैअत' गर्दछन् । अल्लाहको हात

اِنَّ الَّذِيْنَ يُبَايِعُوْنَكَ اِنَّمَا يُبَايِعُوْنَ اللّٰهَ ۗ يَدُ اللّٰهِ فَوْقَ اَيْدِيْهِمْ ۚ فَمَنْ نَّكَثَ فَاِنَّمَا يَنْكُثُ عَلٰى نَفْسِهٖ ۚ وَمَنْ اَوْفٰى بِمَا عٰهَدَ عَلَيْهُ اللّٰهَ فَسَيُؤْتِيْهِ اَجْرًا عَظِيْمًا ۝١٠

उनीहरूको हातमाथि छ । अनि जसले वचन भङ्ग गऱ्यो त वचन भङ्गको नोक्सानी उसैलाई नै छ र जसले त्यस प्रतिज्ञालाई पूरा गऱ्यो, जुन उसले अल्लाहसित गरेको छ त उसलाई अल्लाहले शीघ्र ठूलो प्रतिफल प्रदान गर्नेछ ।

سَيَقُوْلُ لَكَ الْمُخَلَّفُوْنَ مِنَ الْاَعْرَابِ شَغَلَتْنَاۤ
اَمْوَالُنَا وَاَهْلُوْنَا فَاسْتَغْفِرْ لَنَا ۚ يَقُوْلُوْنَ
بِاَلْسِنَتِهِمْ مَّا لَيْسَ فِيْ قُلُوْبِهِمْ ؕ قُلْ فَمَنْ يَّمْلِكُ
لَكُمْ مِّنَ اللّٰهِ شَيْـًٔا اِنْ اَرَادَ بِكُمْ ضَرًّا اَوْ اَرَادَ بِكُمْ
نَفْعًا ؕ بَلْ كَانَ اللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرًا ﴿۱۱﴾

११) (देहाती) गाउँलेहरू मध्ये जो पछि परिसकेका थिए उनीहरू अब तपाईसित भन्नेछन: कि “हाम्रा धन सम्पत्ति र हाम्रा बालबच्चामा हामी व्यस्त थियौं, तसर्थ तपाईले हाम्रा निम्ति क्षमाको प्रार्थना गरिदिनुहोस् !” उनीहरू आफ्नो जिब्रोले ती कुराहरू भन्दछन् जुन उनका हृदयमा छैनन् । भनिदिनुस् कि यदि अल्लाहले तिमीलाई नोक्सानी पुऱ्याउन चाहन्छ वा तिमीलाई फाइदा पुऱ्याउने इच्छा राख्दछ भने कसले उसको सामु तिम्रो निम्ति कुनै कुराको कुनै अख्तियारी राख्दछ ? (कोही छैन), बरु जे जति तिमीले गर्दछौ अल्लाहले त्यसलाई जान्दछ ।

بَلْ ظَنَنْتُمْ اَنْ لَّنْ يَّنْقَلِبَ الرَّسُوْلُ وَالْمُؤْمِنُوْنَ اِلٰۤى
اَهْلِيْهِمْ اَبَدًا وَّزُيِّنَ ذٰلِكَ فِيْ قُلُوْبِكُمْ وَظَنَنْتُمْ ظَنَّ
السَّوْءِ ۖۚ وَكُنْتُمْ قَوْمًۢا بُوْرًا ﴿۱۲﴾

१२) कुरो यो छ कि तिमीहरूले यो ठान्थ्यौ कि पैगम्बर र मोमिनहरूले आफ्ना वतनमा कहिल्यै फर्किआउने छैनन् र यही कुरा तिम्रा हृदयलाई राम्रो प्रतीत भयो र तिमीले गलत अनुमान गऱ्यौ । वास्तवमा तिमीहरू सखाप हुनेवालाहरू हौ ।

وَمَنْ لَّمْ يُؤْمِنْۢ بِاللّٰهِ وَرَسُوْلِهٖ فَاِنَّاۤ اَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَعِيْرًا ﴿١٣﴾

१३) र जसले अल्लाहमाथि र उसको रसूलमाथि ईमान ल्याउँदैन, त हामीले पनि यस्ता काफिरहरूको निम्ति आगो तयार गरिराखेका छौं ।

وَلِلّٰهِ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِؕ يَغْفِرُ لِمَنْ يَّشَآءُ وَيُعَذِّبُ مَنْ يَّشَآءُؕ وَكَانَ اللّٰهُ غَفُوْرًا رَّحِيْمًا ﴿١٤﴾

१४) र आकाशहरू र धरतीको सत्ता अल्लाह कै हो । जसलाई चाहन्छ माफी दिन्छ र जसलाई चाहन्छ दण्ड दिन्छ र अल्लाह बडो क्षमाशील अत्यन्त दयावान छ ।

سَيَقُوْلُ الْمُخَلَّفُوْنَ اِذَا انْطَلَقْتُمْ اِلٰى مَغَانِمَ لِتَاْخُذُوْهَا ذَرُوْنَا نَتَّبِعْكُمْۚ يُرِيْدُوْنَ اَنْ يُّبَدِّلُوْا كَلٰمَ اللّٰهِؕ قُلْ لَّنْ تَتَّبِعُوْنَا كَذٰلِكُمْ قَالَ اللّٰهُ مِنْ قَبْلُۚ فَسَيَقُوْلُوْنَ بَلْ تَحْسُدُوْنَنَاؕ بَلْ كَانُوْا لَا يَفْقَهُوْنَ اِلَّا قَلِيْلًا ﴿١٥﴾

१५) जब तिमी धर्मयुद्धमा प्राप्त हुने माललाई प्राप्त गर्नको निम्ति उनीहरूतिर हिंड्ने छौ त यी पछि पर्नेहरूले तत्काल भन्नेछन् कि "हामीलाई पनि आफ्नो साथ जान अनुमति दिनुस्" उनीहरूले चाहन्छन् कि अल्लाहको कथनलाई परिवर्तित गरिदिऊन् । भनिदिनुस् कि तिमी कहिल्यै पनि हाम्रा साथमा हिंड्न सक्दैनौ । अल्लाहले अघिनै यस्तो भनिदिएको छ । अनि भन्नेछन् (होइन) तिमी त हामीसित ईर्ष्या गर्दछौं । कुरो यो छ कि तिनीहरूले बहुतै कम बुझ्छन् ।

قُلْ لِّلْمُخَلَّفِيْنَ مِنَ الْاَعْرَابِ سَتُدْعَوْنَ اِلٰى قَوْمٍ اُولِيْ بَاْسٍ شَدِيْدٍ تُقَاتِلُوْنَهُمْ اَوْ يُسْلِمُوْنَۚ فَاِنْ تُطِيْعُوْا يُؤْتِكُمُ اللّٰهُ اَجْرًا حَسَنًاۚ وَاِنْ تَتَوَلَّوْا كَمَا تَوَلَّيْتُمْ مِّنْ قَبْلُ يُعَذِّبْكُمْ عَذَابًا اَلِيْمًا ﴿١٦﴾

१६) तपाईले पछाडि छोडिएका बद्दूहरू सित भनिदिनुस् कि तिमीहरू शीघ्र नै एउटा बडो लडाकू कौम(समुदाय) सित युद्धको निम्ति बोलाइनेछौ । उनीहरूसित तिमी युद्ध गरिरहने छौ वा उनीहरूले इस्लाम स्वीकार

गरिहाल्नेछन्, र यदि तिमीले आदेश पालन गर्दछौ भने अल्लाहले तिमीलाई राम्रो प्रतिफल प्रदान गर्नेछ र यदि मुख फर्काउँछौ जस्तो कि यस भन्दा पहिला तिमी मुख फर्काएका थियौ त उसले तिमीलाई कष्टदायक यातना दिनेछ ।

لَيْسَ عَلَى الْأَعْمٰى حَرَجٌ وَّلَا عَلَى الْأَعْرَجِ حَرَجٌ وَّلَا عَلَى الْمَرِيْضِ حَرَجٌ ۗ وَمَنْ يُّطِعِ اللّٰهَ وَرَسُوْلَهٗ يُدْخِلْهُ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ۚ وَمَنْ يَّتَوَلَّ يُعَذِّبْهُ عَذَابًا اَلِيْمًا ﴿١٧﴾

१७) अन्धालाई कुनै गुनाह छ न लङ्गडालाई गुनाह छ र न विरामीलाई गुनाह छ । र जुन मानिस अल्लाह र उसको पैगम्बरको आदेशका पालन गर्नेछ अल्लाहले उसलाई यस्तो स्वर्गमा प्रवेश गराउनेछ जसमुनि नहरहरू बगिराखेका छन् र जो विमुख हुन्छ उसलाई दुःखद यातना दिनेछ ।

لَقَدْ رَضِيَ اللّٰهُ عَنِ الْمُؤْمِنِيْنَ اِذْ يُبَايِعُوْنَكَ تَحْتَ الشَّجَرَةِ فَعَلِمَ مَا فِيْ قُلُوْبِهِمْ فَاَنْزَلَ السَّكِيْنَةَ عَلَيْهِمْ وَاَثَابَهُمْ فَتْحًا قَرِيْبًا ﴿١٨﴾

१८) निश्चय नै अल्लाह मोमिनहरूसित प्रसन्न भयो, जब उनीहरू वृक्षमुनि तपाईसित "बैअत" गरिराखेका थिए । उसले त्यस कुरालाई थाहा पाइहाल्यो जुन उनीहरूका हृदयमा थिए । अतः उनीहरूलाई उसले शान्ति प्रदान गर्‍यो र उनीहरूलाई शीघ्र नै विजय प्रदान गरिदियो ।

وَّمَغَانِمَ كَثِيْرَةً يَّاْخُذُوْنَهَا ۗ وَكَانَ اللّٰهُ عَزِيْزًا حَكِيْمًا ﴿١٩﴾

१९) र धेरै माल समान जसलाई तिनीहरूले प्राप्त गर्नेछन्, र अल्लाह अधिपत्यशाली र तत्वदर्शी छ ।

وَعَدَكُمُ اللّٰهُ مَغَانِمَ كَثِيْرَةً تَاْخُذُوْنَهَا فَعَجَّلَ لَكُمْ هٰذِهٖ وَكَفَّ اَيْدِيَ النَّاسِ عَنْكُمْ ۚ وَلِتَكُوْنَ اٰيَةً لِّلْمُؤْمِنِيْنَ وَيَهْدِيَكُمْ صِرَاطًا مُّسْتَقِيْمًا ﴿٢٠﴾

२०) अल्लाहले तिमीसँग धेरै माल सामानबारे वाचा गरेको छ जसलाई तिमी प्राप्त गर्ने छौ । अर्थात यो

तिमीलाई छिटै प्रदान गरी दियो । र मान्छेहरूको हात तिम्रो लागि रोकी दिएको छ । ताकि मोमिनहरूका लागि यो एउटा निशानी भइहालोस् र उसले तिमीलाई सोझो मार्गमा चलाओस् ।

وَّاُخْرٰى لَمْ تَقْدِرُوْا عَلَيْهَا قَدْ اَحَاطَ اللّٰهُ بِهَا ۚ وَكَانَ اللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرًا ﴿٢١﴾

२१) र तिमीलाई अरु माल समान पनि देओस् जसमाथि अहिलेसम्म तिमीले विजय पाएका छैनौ । तर अल्लाहले तिनलाई आफ्नो संरक्षणमा राखेको छ । र अल्लाह हरेक वस्तुमाथि अधिपत्य राख्दछ ।

وَلَوْ قٰتَلَكُمُ الَّذِيْنَ كَفَرُوْا لَوَلَّوُا الْاَدْبَارَ ثُمَّ لَا يَجِدُوْنَ وَلِيًّا وَّلَا نَصِيْرًا ﴿٢٢﴾

२२) र यदि इन्कार गर्नेहरू तिमीसित युद्ध गरेको भए अवश्य नै पिठ्यू फर्काई भाग्ने थिए । अनि उनीहरूले न कोही संरक्षक पाउनेछन् न त कोही सहायक ।

سُنَّةَ اللّٰهِ الَّتِيْ قَدْ خَلَتْ مِنْ قَبْلُ ۚ وَلَنْ تَجِدَ لِسُنَّةِ اللّٰهِ تَبْدِيْلًا ﴿٢٣﴾

२३) यो अल्लाहको त्यस रीति अनुकूल छ जुन पहिले देखिनै चलिआइरहेको छ र तिमीले अल्लाहको रीतिमा कहिल्यै कुनै परिवर्तन पाउने छैनौ ।

وَهُوَ الَّذِيْ كَفَّ اَيْدِيَهُمْ عَنْكُمْ وَاَيْدِيَكُمْ عَنْهُمْ بِبَطْنِ مَكَّةَ مِنْ بَعْدِ اَنْ اَظْفَرَكُمْ عَلَيْهِمْ ۗ وَكَانَ اللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرًا ﴿٢٤﴾

२४) उही हो जसले खास "मक्कामा" काफिरहरूको हात तिमीबाट र तिम्रो हातलाई उनीबाट रोकिदियो । यसपछि कि उसले तिमीलाई उनीमाथि विजयी बनाएको थियो । र तिमी जे गरिरहेका छौ अल्लाह त्यसलाई देखि रहेको छ ।

هُمُ الَّذِيْنَ كَفَرُوْا وَصَدُّوْكُمْ عَنِ الْمَسْجِدِ الْحَرَامِ

२५) यी ती मानिसहरू नै हुन् जसले

وَالْهَدْيَ مَعْكُوفًا أَن يَبْلُغَ مَحِلَّهُ ۚ وَلَوْلَا رِجَالٌ مُّؤْمِنُونَ وَنِسَاءٌ مُّؤْمِنَاتٌ لَّمْ تَعْلَمُوهُمْ أَن تَطَئُوهُمْ فَتُصِيبَكُم مِّنْهُم مَّعَرَّةٌ بِغَيْرِ عِلْمٍ ۖ لِّيُدْخِلَ اللَّهُ فِي رَحْمَتِهِ مَن يَشَاءُ ۚ لَوْ تَزَيَّلُوا لَعَذَّبْنَا الَّذِينَ كَفَرُوا مِنْهُمْ عَذَابًا أَلِيمًا ﴿٢٥﴾

इन्कार गरे र तिमीलाई "मस्जिदे हराम" (कअ्बा) बाट रोकिदिए र कुर्बानीको निम्ति बाँधिएका जनावरहरूलाई पनि कुर्बानी स्थल सम्म पुग्नबाट रोकिदिए। र यदि यस्ता अनेक मुसलमान पुरुष र अनेक मुसलमान स्त्रीहरू नभएको भए जसलाई तिमी जान्दैन थियौ। कि उनीहरूलाई कुल्चिदिएको भए, उनीहरूको सिलसिलामा अज्ञानतामा तिमीमाथि पनि नोक्सान पुगिहाल्थ्यो। त तिमीलाई युद्धको अनुमति दिइने थियो। तर अनुमति यसकारण दिइएन ताकि अल्लाह जसलाई चाहन्छ आफ्नो दयालुतामा प्रवेश गराइहालोस्। यदि ती ईमानवालाहरू अलग हुन्थे भने उनीहरूमध्ये जसले इन्कार गर्नेथिए उनीहरूलाई हामीले अवश्य दुःखद यातना दिनेथियौं।

إِذْ جَعَلَ الَّذِينَ كَفَرُوا فِي قُلُوبِهِمُ الْحَمِيَّةَ حَمِيَّةَ الْجَاهِلِيَّةِ فَأَنزَلَ اللَّهُ سَكِينَتَهُ عَلَىٰ رَسُولِهِ وَعَلَى الْمُؤْمِنِينَ وَأَلْزَمَهُمْ كَلِمَةَ التَّقْوَىٰ وَكَانُوا أَحَقَّ بِهَا وَأَهْلَهَا ۚ وَكَانَ اللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمًا ﴿٢٦﴾

२६) (यादगर) जब इन्कार गर्नेहरूले आफ्ना हृदयमा हठलाई प्रश्रय दिए, र अज्ञानपूर्वक हठ गरे। तसर्थ अल्लाहले आफ्नो रसूलमाथि र ईमानवालाहरूमाथि संतोष अवतरति गऱ्यो। र अल्लाहले मुसलमानहरूलाई संयमको कुरामा दृढ, राख्यो, र उनीहरू यसको धेरै हकदार र योग्य पनि थिए र अल्लाह त प्रत्येक कुरा जान्दछ।

لَقَدْ صَدَقَ اللَّهُ رَسُولَهُ الرُّؤْيَا بِالْحَقِّ ۖ لَتَدْخُلُنَّ

२७) निश्चय नै अल्लाहले आफ्नो रसूललाई

الْمَسْجِدَ الْحَرَامَ إِن شَاءَ اللَّهُ آمِنِينَ مُحَلِّقِينَ رُءُوسَكُمْ وَمُقَصِّرِينَ لَا تَخَافُونَ ۖ فَعَلِمَ مَا لَمْ تَعْلَمُوا فَجَعَلَ مِن دُونِ ذَٰلِكَ فَتْحًا قَرِيبًا ﴿٢٧﴾

सत्यकासाथ साँचो सपना देखायो । "कि यदि अल्लाहले चाह्यो भने तिमी अवश्य मस्जिदे हराम (कअ्बामा) निर्भिक भएर प्रवेश गर्नेछौ, आफ्नो टाउकोको कपाल खौराएको वा केश सानो पार्दै तिमीलाई कुनै त्रास हुनेछैन ।" अनि उसले ती कुराहरू जान्दछ जुन तिमी जान्दैनथ्यौ । अतः यसभन्दा पहिला उसले तिमीलाई शीघ्र प्राप्त हुनेवाला विजय प्रदान गरिदियो ।

هُوَ الَّذِي أَرْسَلَ رَسُولَهُ بِالْهُدَىٰ وَدِينِ الْحَقِّ لِيُظْهِرَهُ عَلَى الدِّينِ كُلِّهِ ۚ وَكَفَىٰ بِاللَّهِ شَهِيدًا ﴿٢٨﴾

२८) उही हो जसले आफ्नो रसूललाई मार्गदर्शन र सत्यधर्मका साथ पठायो, ताकि उसलाई समस्त धर्महरूमाथि अधिपत्य प्रदान गरोस् र साक्षीको हैसियतले अल्लाह पर्याप्त छ ।

مُّحَمَّدٌ رَّسُولُ اللَّهِ ۚ وَالَّذِينَ مَعَهُ أَشِدَّاءُ عَلَى الْكُفَّارِ رُحَمَاءُ بَيْنَهُمْ ۖ تَرَاهُمْ رُكَّعًا سُجَّدًا يَبْتَغُونَ فَضْلًا مِّنَ اللَّهِ وَرِضْوَانًا ۖ سِيمَاهُمْ فِي وُجُوهِهِم مِّنْ أَثَرِ السُّجُودِ ۚ ذَٰلِكَ مَثَلُهُمْ فِي التَّوْرَاةِ ۚ وَمَثَلُهُمْ فِي الْإِنجِيلِ كَزَرْعٍ أَخْرَجَ شَطْأَهُ فَآزَرَهُ فَاسْتَغْلَظَ فَاسْتَوَىٰ عَلَىٰ سُوقِهِ يُعْجِبُ الزُّرَّاعَ لِيَغِيظَ بِهِمُ الْكُفَّارَ ۗ وَعَدَ اللَّهُ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِنْهُم مَّغْفِرَةً وَأَجْرًا عَظِيمًا ﴿٢٩﴾

२९) मोहम्मद (स.) अल्लाहका रसूल हुन् र जुन मानिसहरू उनको साथमा छन् काफिरहरूको लागि कठोर छन् र आपसमा दयालु । तिमीले उनीहरूलाई रुकूअ्मा, सजदामा, अल्लाहको उदार अनुग्रह र उसको प्रसन्नता चाहिराखेको देख्नेछौं । उनीहरूको अनुहारमाथि सिज्दाको चिन्ह छ । तिनीहरूको यही विशेषताहरू तौरैतमा छ र इन्जीलमा पनि त्यस खेती जस्तै उल्लेखित छ, जसले आफ्नो अंकुर निकाल्यो, अनि उसलाई शक्ति

पुऱ्यायो र त्यो मोटो भयो र त्यो आफ्नो तनमाथि (डाँठमा) सीधा खडा भयो र किसानलाई प्रसन्न पारेको छ, ताकि उनीहरूले गर्दा इन्कार गर्नेहरूको हृदयमा ईर्ष्या उत्पन्न गराओस् । यी ईमानवालाहरू र असल कर्म गर्नेहरूसित अल्लाहले क्षमा र ठूलो प्रतिफलको वाचा गरेको छ ।



# सूरतुल् हुजुरात-४९




सूरतुल् हुजुरात मदनी हो, यसमा १८ आयत र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ**

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تُقَدِّمُوْا بَيْنَ يَدَيِ اللّٰهِ وَرَسُوْلِهٖ وَاتَّقُوا اللّٰهَ ۭ اِنَّ اللّٰهَ سَمِيْعٌ عَلِيْمٌ ①

१) हे मोमिनहरू ! (धर्मको बारेमा) अल्लाह र उसका रसूल भन्दा अगाडि नबढ्नु र अल्लाहसित डर मानी राख । निश्चय नै अल्लाह सुन्दछन्, जान्दछन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لَا تَرْفَعُوْٓا اَصْوَاتَكُمْ فَوْقَ صَوْتِ النَّبِيِّ وَلَا تَجْهَرُوْا لَهٗ بِالْقَوْلِ كَجَهْرِ بَعْضِكُمْ لِبَعْضٍ اَنْ تَحْبَطَ اَعْمَالُكُمْ وَاَنْتُمْ لَا تَشْعُرُوْنَ ②

२) हे ईमानवालाहरू ! आफ्ना आवाजहरू पैगम्बरको आवाजभन्दा उच्च नपार न उनी सित ठूलो स्वरमा कुरा गर जुन प्रकारले तिमीहरू आपसमा एक अर्कासित कराएर बोल्दछौ । यस्तो नहोस् कि तिम्रो कर्महरू खेर गइहालुन् र तिमीलाई खबर पनि नहोस् ।

اِنَّ الَّذِيْنَ يَغُضُّوْنَ اَصْوَاتَهُمْ عِنْدَ رَسُوْلِ اللّٰهِ اُولٰۗىِٕكَ الَّذِيْنَ امْتَحَنَ اللّٰهُ قُلُوْبَهُمْ لِلتَّقْوٰى ۭ لَهُمْ مَّغْفِرَةٌ وَّاَجْرٌ عَظِيْمٌ ③

३) जुन मानिसहरू रसूलको हजुरमा आफ्नो आवाज मन्द राख्दछन् यिनै ती मानिसहरू हुन् जसका हृदयहरूलाई अल्लाहले संयमको निम्ति जाँची लिएको छ । उनको लागि मुक्ति छ र ठूलो प्रतिफल छ ।

اِنَّ الَّذِيْنَ يُنَادُوْنَكَ مِنْ وَّرَاۗءِ الْحُجُرٰتِ اَكْثَرُهُمْ لَا يَعْقِلُوْنَ ④

४) (हे नबी) जुन मानिसहरूले तपाईलाई कोठाको पछाडिबाट बोलाउँछन् । उनीहरूमध्ये धेरै मूर्ख छन् ।

وَلَوْ أَنَّهُمْ صَبَرُوا حَتَّىٰ تَخْرُجَ إِلَيْهِمْ لَكَانَ خَيْرًا لَّهُمْ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿٥﴾

५) र यदि उनीहरूले तपाईं स्वयम् निस्केर उनी समक्ष नआएसम्म धैर्य गरिराखेको भए यो उनीहरूको निम्ति राम्रो हुने थियो । अल्लाह त बडो क्षमाशील, अत्यन्त दयावान छ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن جَاءَكُمْ فَاسِقٌ بِنَبَإٍ فَتَبَيَّنُوا أَن تُصِيبُوا قَوْمًا بِجَهَالَةٍ فَتُصْبِحُوا عَلَىٰ مَا فَعَلْتُمْ نَادِمِينَ ﴿٦﴾

६) हे मोमिनहरू यदि कुनै अवज्ञाकारीले तिमीलाई कुनै खबर लिएर आउँछ भने उसको राम्रो सँग छानबिन गर्ने गर । कहीँ यस्तो नहोस् कि तिमीले कुनै गिरोहलाई अज्ञानतामा कष्ट र नोक्सानी पुऱ्याइहाल, अनि आफूले गरेको कुरामाथि पश्चातप गर ।

وَاعْلَمُوا أَنَّ فِيكُمْ رَسُولَ اللَّهِ ۚ لَوْ يُطِيعُكُمْ فِي كَثِيرٍ مِّنَ الْأَمْرِ لَعَنِتُّمْ وَلَٰكِنَّ اللَّهَ حَبَّبَ إِلَيْكُمُ الْإِيمَانَ وَزَيَّنَهُ فِي قُلُوبِكُمْ وَكَرَّهَ إِلَيْكُمُ الْكُفْرَ وَالْفُسُوقَ وَالْعِصْيَانَ ۚ أُولَٰئِكَ هُمُ الرَّاشِدُونَ ﴿٧﴾

७) र जानी राख कि तिम्रो बीचमा अल्लाहका पैगम्बर(संदेष्टा) छन् । यदि धेरै जसो कुराहरूमा उनले तिम्रो कुरा मान्ने गर्दछन् भने तिमी कठिनाईमा पर्नेछौ । तर अल्लाहले तिम्रो निम्ति ईमानलाई प्रिय बनाइदियो र त्यसलाई तिम्रा हृदयमा सुन्दरता प्रदान गरेको छ र इन्कार, उल्लंघन र अवज्ञालाई तिम्रो दृष्टिमा अप्रिय बनाइदिएको छ । यही मान्छेहरू सोझो मार्गवालाहरू हन् ।

فَضْلًا مِّنَ اللَّهِ وَنِعْمَةً ۚ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿٨﴾

८) अल्लाहको कृपा र पुरस्कारबाट, र अल्लाह जान्नेवाला र तत्वदर्शी छ ।

وَإِن طَائِفَتَانِ مِنَ الْمُؤْمِنِينَ اقْتَتَلُوا فَأَصْلِحُوا بَيْنَهُمَا ۖ فَإِن بَغَتْ إِحْدَاهُمَا عَلَى الْأُخْرَىٰ فَقَاتِلُوا الَّتِي تَبْغِي حَتَّىٰ تَفِيءَ إِلَىٰ أَمْرِ اللَّهِ ۚ فَإِن

९) र यदि मोमिनीहरूका कुनै दुई समूह आपसमा लडिहाल्छन् भने, यिनीहरूमा मेलमिलाप गराइदेऊ, र

فَاءَتْ فَأَصْلِحُوا بَيْنَهُمَا بِالْعَدْلِ وَأَقْسِطُوا ۖ
إِنَّ اللَّهَ يُحِبُّ الْمُقْسِطِينَ ﴿٩﴾

यदि एउटा समूहले अर्को समूहमाथि ज्यादति गर्दछ भने ज्यादति गर्ने वालासित लड, यहाँसम्म कि त्यो अल्लाहको आदेशतिर प्रवृत्तहोस्, अनि जब प्रवृत्त हुन्छ भने दुवै समूहमा इन्साफका साथ आपसमा मेलमिलाप गराइदेऊ र न्याय गर्नु । किनकि अल्लाह न्याय गर्नेहरूलाई रुचाउँदछ ।

إِنَّمَا الْمُؤْمِنُونَ إِخْوَةٌ فَأَصْلِحُوا بَيْنَ أَخَوَيْكُمْ ۚ
وَاتَّقُوا اللَّهَ لَعَلَّكُمْ تُرْحَمُونَ ﴿١٠﴾

१०) सबै मोमिनहरू एक आपसमा भाइ-भाइ हुन्, तसर्थ आफ्ना दुई भाइहरूमा मेलमिलाप गराउने गर । र अल्लाहसित डर मानी राख ताकि तिमीमाथि दया गरियोस् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا لَا يَسْخَرْ قَوْمٌ مِّن قَوْمٍ عَسَىٰ أَن
يَكُونُوا خَيْرًا مِّنْهُمْ وَلَا نِسَاءٌ مِّن نِّسَاءٍ عَسَىٰ أَن
يَكُنَّ خَيْرًا مِّنْهُنَّ ۖ وَلَا تَلْمِزُوا أَنفُسَكُمْ
وَلَا تَنَابَزُوا بِالْأَلْقَابِ ۖ بِئْسَ الِاسْمُ الْفُسُوقُ بَعْدَ
الْإِيمَانِ ۚ وَمَن لَّمْ يَتُبْ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ﴿١١﴾

११) हे मोमिनहरू ! पुरुषहरूले अर्को पुरुषको उपहास नगरोस् । सम्भव छ कि उनीहरू तिनीहरूभन्दा राम्रा होऊन् र स्त्रीहरूले अर्को स्त्रीको (हाँसो) नगरुन्, सम्भव छ कि उनीहरू तिनीहरूभन्दा राम्री होऊन् र आपसमा एक अर्कालाई आक्षेप नगर न नराम्रो उपाधिले नै सम्बोधन गर ईमान ल्याइसकेपछि नराम्रो नामाकरण गर्नु पाप हो । (यसबाट) जसले प्रायश्चित गर्दैन, उनीहरू अच्याचारी हुन् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا اجْتَنِبُوا كَثِيرًا مِّنَ الظَّنِّ إِنَّ
بَعْضَ الظَّنِّ إِثْمٌ ۖ وَلَا تَجَسَّسُوا وَلَا يَغْتَب بَّعْضُكُم
بَعْضًا ۚ أَيُحِبُّ أَحَدُكُمْ أَن يَأْكُلَ لَحْمَ أَخِيهِ مَيْتًا
فَكَرِهْتُمُوهُ ۚ وَاتَّقُوا اللَّهَ ۚ إِنَّ اللَّهَ تَوَّابٌ رَّحِيمٌ ﴿١٢﴾

१२) हे ईमानवालाहरू ! धेरै शंका उपशंका गर्नबाट बच । किन भने केही शंका पाप हुन्छन् र एक अर्काको जासूसी नगर, र न त

कसैको अनुपस्थितिमा निन्दा गर्नु । के तिमीहरूमध्ये कसैले आफ्नो मृतक भाइको मासु खान चाहन्छ ? यसलाई तिमीले अवश्य नै घृणा गर्ने छौ । (तसर्थ) अल्लाहसित डर मान्ने गर । निश्चय नै अल्लाह प्रायश्चित स्वीकार गर्नेवाला, अत्यन्त दयावान छ ।

يٰۤاَيُّهَا النَّاسُ اِنَّا خَلَقْنٰكُمْ مِّنْ ذَكَرٍ وَّاُنْثٰى وَجَعَلْنٰكُمْ
شُعُوْبًا وَّقَبَآىِٕلَ لِتَعَارَفُوْا ؕ اِنَّ اَكْرَمَكُمْ عِنْدَ اللّٰهِ
اَتْقٰىكُمْ ؕ اِنَّ اللّٰهَ عَلِيْمٌ خَبِيْرٌ ﴿۱۳﴾

१३) हे मानिसहरू ! हामीले तिमीहरू सबैलाई एउटै पुरुष र एउटी स्त्रीबाट सृष्टि गर्‍यौं र तिमीलाई जातविरादरी र कबिलाहरू (गोत्रहरू) को रूप दियौं, ताकि तिमीले एक अर्कालाई चिन्न सक । (वास्तवमा) अल्लाहकहाँ तिमीमध्ये सर्वाधिक प्रतिष्ठित त्यो हो जो कि तिमीहरूमध्ये (अनुचित कर्मबाट) बढी भय गर्नेवाला हुन्छ । निश्चय नै अल्लाह सबै कुरा जान्दछ, ऊ सर्वज्ञ छ ।

قَالَتِ الْاَعْرَابُ اٰمَنَّا ؕ قُلْ لَّمْ تُؤْمِنُوْا وَلٰكِنْ قُوْلُوْۤا
اَسْلَمْنَا وَلَمَّا يَدْخُلِ الْاِيْمَانُ فِيْ قُلُوْبِكُمْ ؕ
وَاِنْ تُطِيْعُوا اللّٰهَ وَرَسُوْلَهٗ لَا يَلِتْكُمْ مِّنْ اَعْمَالِكُمْ
شَيْـًٔا ؕ اِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ﴿۱۴﴾

१४) देहातीहरूले भने कि : हामीले ईमान ल्यायौं भनिदिनुस् कि तिमीले ईमान ल्याएनौ । किन्तु तिमीहरूले यस्तो भन कि हामीले आज्ञाकारी भयौं "यद्यपि ईमानले तिम्रा हृदयमा अहिले सम्म प्रवेश नै गरेको छैन र यदि तिमीले अल्लाह र उसको रसूलको आज्ञाकारीता गर्ने गर्दछौ भने अल्लाहले तिम्रो कर्मबाट केही कम गर्ने छैन । निःसन्देह अल्लाह

बडो क्षमाशील, अत्यन्त दयावान छ ।

१५) मोमिनहरू त ती नै हुन् जसले अल्लाह र उसको रसूलमाथि ईमान ल्याउँछन् अनि उनीहरूले कुनै शंका सन्देह गर्दैनन् र आफ्ना धनसम्पत्ति र आफ्ना ज्यानले अल्लाहको मार्गमा जेहाद (धर्म युद्ध) गर्दछन् । यीनै मानिसहरू असल (मुसलमान) हुन् ।

إِنَّمَا الْمُؤْمِنُونَ الَّذِينَ آمَنُوا بِاللَّهِ وَرَسُولِهِ ثُمَّ لَمْ يَرْتَابُوا وَجَاهَدُوا بِأَمْوَالِهِمْ وَأَنفُسِهِمْ فِي سَبِيلِ اللَّهِ ۚ أُولَٰئِكَ هُمُ الصَّادِقُونَ ﴿١٥﴾

१६) (उनीहरू सित) भन्नुस् कि "के तिमीले अल्लाहलाई आफ्नो धार्मिक आस्थाको सूचना दिईरहेकाछौ ? अल्लाह त आकाशहरू र धरतीका सम्पूर्ण कुरालाई जान्दछ । र अल्लाह हरेक कुराको जान्नेवाला हो ।

قُلْ أَتُعَلِّمُونَ اللَّهَ بِدِينِكُمْ وَاللَّهُ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۚ وَاللَّهُ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿١٦﴾

१७) उनीहरू तपाईमाथि आफ्नो मुसलमान हुने कुराको उपकार दर्शाउँदैछन्, तपाईं भनिदिनुस् कि आफ्नो मुसलमान हुने कुरोको उपकार म माथि नलगाऊ । वास्तवमा अल्लाहको तिमीमाथि ठूलो उपकार छ कि तिमीलाई ईमानवाला बनायो यदि तिमी सही बाटोमा छौ भने ।

يَمُنُّونَ عَلَيْكَ أَنْ أَسْلَمُوا ۖ قُل لَّا تَمُنُّوا عَلَيَّ إِسْلَامَكُم ۖ بَلِ اللَّهُ يَمُنُّ عَلَيْكُمْ أَنْ هَدَاكُمْ لِلْإِيمَانِ إِن كُنتُمْ صَادِقِينَ ﴿١٧﴾

१८) विश्वास गर अल्लाह आकाशहरू र धरतीमा लुकेका कुराहरू जान्दछ र जे जति तिमीले गर्दछौ, त्यसलाई देख्दैछ ।

إِنَّ اللَّهَ يَعْلَمُ غَيْبَ السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَاللَّهُ بَصِيرٌ بِمَا تَعْمَلُونَ ﴿١٨﴾

# सूरतु क़ाफ-५०



सूरतु क़ाफ मक्की हो, यसमा ४५ आयत र ३ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِیْمِ

१) क़ाफ, र ठूलो गरिमामय यस कुरआन मजीदको कसम ।

قٓ ۚ وَالْقُرْاٰنِ الْمَجِیْدِ ۟ۚ

२) बरु यी मानिसहरूले आश्चार्य प्रकट गरे कि उनीहरूमध्येबाटै एउटा सचेत गर्नेवाला उनीहरूको पासमा आयो, तब काफिरहरूले भन्न थाले कि यो कुरा त अनौठो हो ।

بَلْ عَجِبُوْۤا اَنْ جَآءَهُمْ مُّنْذِرٌ مِّنْهُمْ فَقَالَ الْكٰفِرُوْنَ هٰذَا شَیْءٌ عَجِیْبٌ ۟ۚ

३) के जब हामी मरेर माटो भइहाल्छौं तब फेरि जीवित हुने कुरो ? यो त बुझ्ने कुरा होइन ।

ءَاِذَا مِتْنَا وَكُنَّا تُرَابًا ۚ ذٰلِكَ رَجْعٌۢ بَعِیْدٌ ۟

४) उनीहरूबाट (शरीरलाई) धरतीले जेजति कम गर्दै जान्छ, हामीलाई थाहा छ र हाम्रो पासमा सुरक्षित राख्ने किताब छ ।

قَدْ عَلِمْنَا مَا تَنْقُصُ الْاَرْضُ مِنْهُمْ ۚ وَعِنْدَنَا كِتٰبٌ حَفِیْظٌ ۟

५) बरु जब उनीहरूको पासमा सत्य धर्म आइपुग्यो तब उनीहरूले उसलाई झूठा भने तसर्थ यिनीहरू एउटा जटिल कुरामा परिरहेका छन् ।

بَلْ كَذَّبُوْا بِالْحَقِّ لَمَّا جَآءَهُمْ فَهُمْ فِیْۤ اَمْرٍ مَّرِیْجٍ ۟

६) के उनीहरूले आफू माथि आकाशतिर हेरेनन् ? कि हामीले त्यसलाई कसरी बनाएकाछौं र कसरी सुसज्जित

اَفَلَمْ یَنْظُرُوْۤا اِلَی السَّمَآءِ فَوْقَهُمْ كَیْفَ بَنَیْنٰهَا وَزَیَّنّٰهَا وَمَا لَهَا مِنْ فُرُوْجٍ ۟

गरेका छौं र त्यसमा कहीँ पनि चिरा (प्वाल) छैन ?

७) र धरतीलाई हामीले बिछ्याई दिएका छौं र त्यसमा हामीले पहाडहरू स्थापित गऱ्यौं र त्यसमा हामीले किसिम-किसिमका राम्रा कुराहरू उमारेका छौं ।

وَالْأَرْضَ مَدَدْنٰهَا وَاَلْقَيْنَا فِيْهَا رَوَاسِيَ وَاَنْۢبَتْنَا فِيْهَا مِنْ كُلِّ زَوْجٍۢ بَهِيْجٍ ۝٧

८) ताकि प्रवृत्त हुनेवाला भक्तहरूका लागि मार्गदर्शन र उपदेशको माध्यम बनोस् ।

تَبْصِرَةً وَّذِكْرٰى لِكُلِّ عَبْدٍ مُّنِيْبٍ ۝٨

९) र हामीले आकाशबाट बरकतवाला पानीको बृष्टि गऱ्यौं र त्यसबाट बाग-बगैंचाहरू उमाऱ्यौं र खेतीको अन्न उमाऱ्यौं,

وَنَزَّلْنَا مِنَ السَّمَآءِ مَآءً مُّبٰرَكًا فَاَنْۢبَتْنَا بِهٖ جَنّٰتٍ وَّحَبَّ الْحَصِيْدِ ۝٩

१०) र अग्ला-अग्ला खजूरका रुखहरू, जसका (फलका) झुप्पाहरू पत्रमाथि पत्र परेका हुन्छन् ।

وَالنَّخْلَ بٰسِقٰتٍ لَّهَا طَلْعٌ نَّضِيْدٌ ۝١٠

११) भक्तहरूको जीविकाको लागि, र हामीले पानीबाट बाँझो भूमिलाई जीवित पाऱ्यौं, यसै प्रकार (चिहानबाट) निष्कासन हुनेछ ।

رِّزْقًا لِّلْعِبَادِ ۙ وَاَحْيَيْنَا بِهٖ بَلْدَةً مَّيْتًا ۭ كَذٰلِكَ الْخُرُوْجُ ۝١١

१२) यसभन्दा पहिला "नूहको" कौम र "रस्स स्थानका बसिन्दाहरू" र "समूदले" झूठा भनी सकेका छन् ।

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوْحٍ وَّاَصْحٰبُ الرَّسِّ وَثَمُوْدُ ۝١٢

१३) र आद र फिरऔन र लूतका भाइ बन्धुले पनि ।

وَعَادٌ وَّفِرْعَوْنُ وَاِخْوَانُ لُوْطٍ ۝١٣

१४) र "ऐकावालाहरूले" र तुब्बाको समूहले पनि सबैले मिथ्यारोपण

وَّاَصْحٰبُ الْاَيْكَةِ وَقَوْمُ تُبَّعٍ ۭ كُلٌّ كَذَّبَ الرُّسُلَ فَحَقَّ وَعِيْدِ ۝١٤

गरी रसूलहरूलाई झूठा भनेका थिए । त्यसकारण यिनी माथि मेरो सजायको वाचा सत्य भइहाल्यो ।

أَفَعَيِينَا بِالْخَلْقِ الْأَوَّلِ ۚ بَلْ هُمْ فِي لَبْسٍ مِّنْ خَلْقٍ جَدِيدٍ ﴿١٥﴾

१५) के हामी पहिलो पटक सृष्टि गरेबाट थाकिसकेका छौं ? (होइन,) बरु यिनीहरू पुनः सृष्टि हुने बारे सन्देहमा छन् ।

وَلَقَدْ خَلَقْنَا الْإِنسَانَ وَنَعْلَمُ مَا تُوَسْوِسُ بِهِ نَفْسُهُ ۖ وَنَحْنُ أَقْرَبُ إِلَيْهِ مِنْ حَبْلِ الْوَرِيدِ ﴿١٦﴾

१६) र हामीले नै मानिसलाई सृष्टि गरेका हौं र जुन विचारहरू उसको मनमा आउँछन्, हामीले तिनलाई जान्दछौं । र हामी उसको रक्त बाहिनी नली भन्दा पनि नजिक छौं ।

إِذْ يَتَلَقَّى الْمُتَلَقِّيَانِ عَنِ الْيَمِينِ وَعَنِ الشِّمَالِ قَعِيدٌ ﴿١٧﴾

१७) जब दुई लिनेवाला (फरिश्ता) लिइरहेका हुन्छन्, एउटा दाँया र अर्को देब्रे तर्फ बसेको हुन्छ ।

مَّا يَلْفِظُ مِن قَوْلٍ إِلَّا لَدَيْهِ رَقِيبٌ عَتِيدٌ ﴿١٨﴾

१८) मानिसले कुनै कुरा भन्दैन तर उसको पासमा एउटा निरीक्षक तयार रहन्छ ।

وَجَاءَتْ سَكْرَةُ الْمَوْتِ بِالْحَقِّ ۖ ذَٰلِكَ مَا كُنتَ مِنْهُ تَحِيدُ ﴿١٩﴾

१९) र मृत्युको बेहोशीले सत्य कुरा ल्यायो । यही कुरा हो जसबाट तिमी पन्छिराखेका थियौ ।

وَنُفِخَ فِي الصُّورِ ۚ ذَٰلِكَ يَوْمُ الْوَعِيدِ ﴿٢٠﴾

२०) र सूर (नरसिन्घा) फूँकिनेछ । सजायको वाचाको दिन यही हो ।

وَجَاءَتْ كُلُّ نَفْسٍ مَّعَهَا سَائِقٌ وَشَهِيدٌ ﴿٢١﴾

२१) र हरेक व्यक्ति यस दिशामा यसरी आउने छ, कि उसको साथमा एउटा ल्याउनेवाला हुनेछ र एउटा गवाही दिनेवाला ।

لَقَدْ كُنْتَ فِيْ غَفْلَةٍ مِّنْ هٰذَا فَكَشَفْنَا عَنْكَ غِطَآءَكَ فَبَصَرُكَ الْيَوْمَ حَدِيْدٌ ﴿٢٢﴾

२२) निःसन्देह तिमी यस कुरातिरबाट उदासीन थियौ । तर हामीले तिम्रो अगाडिबाट परदा हटाई दियौं त आज तिम्रो दृष्टि बडो तेज छ ।

وَقَالَ قَرِيْنُهٗ هٰذَا مَا لَدَيَّ عَتِيْدٌ ﴿٢٣﴾

२३) र उसको साथी (फरिश्ता) ले भन्नेछ यो हो (कर्मपत्र) जुन म सँग थियो ।

اَلْقِيَا فِيْ جَهَنَّمَ كُلَّ كَفَّارٍ عَنِيْدٍ ﴿٢٤﴾

२४) प्रत्येक अटेरी काफिरलाई नर्कमा हालिदेऊ ।

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ مُّرِيْبٍ ﴿٢٥﴾

२५) जो धर्म कामलाई रोक्ने वाला, सीमा उल्लंघन गर्नेवाला र शंकाको कुरा गर्नेवाला थियो ।

الَّذِيْ جَعَلَ مَعَ اللّٰهِ اِلٰهًا اٰخَرَ فَاَلْقِيٰهُ فِي الْعَذَابِ الشَّدِيْدِ ﴿٢٦﴾

२६) जसले अल्लाहको साथमा अरुलाई पूज्य बनाएको थियो । तसर्थ उसलाई दुःखद यातनामा हालिदेऊ ।

قَالَ قَرِيْنُهٗ رَبَّنَا مَاۤ اَطْغَيْتُهٗ وَلٰكِنْ كَانَ فِيْ ضَلٰلٍۢ بَعِيْدٍ ﴿٢٧﴾

२७) उसको साथी (शैतान) ले भन्नेछ कि, हाम्रो पालनकर्ता । मैले उसलाई मार्ग विचलित गरेको थिएन, बरु यो आफै मार्गबाट टाढा भइ भौतारिदै थियो ।

قَالَ لَا تَخْتَصِمُوْا لَدَيَّ وَقَدْ قَدَّمْتُ اِلَيْكُمْ بِالْوَعِيْدِ ﴿٢٨﴾

२८) अल्लाहको आदेश हुने छ कि मेरो सामु, झगडाको कुरा नगर । हामीले तिम्रो पासमा पहिला नै यातनाको वाचा पठाइसकेका थियौं ।

مَا يُبَدَّلُ الْقَوْلُ لَدَيَّ وَمَاۤ اَنَا بِظَلَّامٍ لِّلْعَبِيْدِ ﴿٢٩﴾

२९) हामी कहाँ कुरा परिवर्तित हुदैन र हामीले आफ्ना भक्तहरूमाथि अलिकति पनि अत्याचार गर्दैनौं ।

يَوْمَ نَقُوْلُ لِجَهَنَّمَ هَلِ امْتَلَاْتِ وَتَقُوْلُ هَلْ مِنْ مَّزِيْدٍ ﴿٣٠﴾

३०) जुन दिन हामीले नर्कसित सोध्ने छौं कि के तिमी भरिहाल्यौ ? र

त्यसले भन्ने छ कि केही अरु पनि छन् ?

وَأُزْلِفَتِ الْجَنَّةُ لِلْمُتَّقِينَ غَيْرَ بَعِيدٍ ٣١

३१) र जन्नत संयमीहरूको निकट गरिनेछ, त्यो टाढा रहनेछैन ।

هَٰذَا مَا تُوعَدُونَ لِكُلِّ أَوَّابٍ حَفِيظٍ ٣٢

३२) यो हो जसको तिमीलाई वचन दिइन्थ्यो हरेक प्रवृत्त हुनेवाला, र नियमबद्ध रहनेवालाहरू सित ।

مَنْ خَشِيَ الرَّحْمَٰنَ بِالْغَيْبِ وَجَاءَ بِقَلْبٍ مُنِيبٍ ٣٣

३३) जसले अल्लाहसित अदृश्यमा डर मान्थे र जो प्रवृत्त हुनेवाला हृदय लिएर आयो ।

ادْخُلُوهَا بِسَلَامٍ ذَٰلِكَ يَوْمُ الْخُلُودِ ٣٤

३४) तिमी यस स्वर्गमा कुशलताका साथ प्रवेश गर, यो सधैं रहने दिन हो ।

لَهُمْ مَا يَشَاءُونَ فِيهَا وَلَدَيْنَا مَزِيدٌ ٣٥

३५) त्यहाँ उनीहरूले जे चाहने छन्, उनीहरूलाई प्राप्त हुने छ । बरु हामीकहाँ अरु पनि धेरै कुरा छन् ।

وَكَمْ أَهْلَكْنَا قَبْلَهُمْ مِنْ قَرْنٍ هُمْ أَشَدُّ مِنْهُمْ بَطْشًا فَنَقَّبُوا فِي الْبِلَادِ هَلْ مِنْ مَحِيصٍ ٣٦

३६) र हामीले उनीहरूभन्दा पहिला पनि कैयन् समुदायलाई नष्ट गरिसकेका छौं, जो उनीहरू भन्दा शक्तिमा धेरै बढी थिए, उनीहरू शहरमा घुम्दै रहे कि कतै भाग्ने ठाउँ छ ?

إِنَّ فِي ذَٰلِكَ لَذِكْرَىٰ لِمَنْ كَانَ لَهُ قَلْبٌ أَوْ أَلْقَى السَّمْعَ وَهُوَ شَهِيدٌ ٣٧

३७) यसमा प्रत्येक त्यस व्यक्तिको निम्ति शिक्षा छ जसको पासमा हृदय छ र उसको निम्ति जो हाजिर भई ध्यान लगाएर कानले सुन्दछ ।

وَلَقَدْ خَلَقْنَا السَّمَاوَاتِ وَالْأَرْضَ وَمَا بَيْنَهُمَا فِي سِتَّةِ أَيَّامٍ وَمَا مَسَّنَا مِنْ لُغُوبٍ ٣٨

३८) हामीले आकाशहरूलाई र धरतीलाई र जे जति तिनीहरूको बीचमा छ ६ दिनमा सृष्टि गरिदियौं र हामीलाई कुनै थकाइले छुन सकेन ।

فَاصْبِرْ عَلٰى مَا يَقُوْلُوْنَ وَسَبِّحْ بِحَمْدِ رَبِّكَ قَبْلَ طُلُوْعِ الشَّمْسِ وَقَبْلَ الْغُرُوْبِ ۝٣٩

३९) यसर्थ जे जति यिनीहरू (कुफ्फार) भन्दछन् त्यसमा धैर्य धारण गर्नुस् र सूर्य उदयभन्दा अगाडि र त्यो अस्त हुनुभन्दा पहिला आफ्ना पालनकर्ताको प्रशंसाका साथ गुणगान गर्दै गर्नु ।

وَمِنَ الَّيْلِ فَسَبِّحْهُ وَاَدْبَارَ السُّجُوْدِ ۝٤٠

४०) र रातको कुनै बेला पनि उसको महिमागान गर्नु र नमाज पछि पनि ।

وَاسْتَمِعْ يَوْمَ يُنَادِ الْمُنَادِ مِنْ مَّكَانٍ قَرِيْبٍ ۝٤١

४१) र ध्यानपूर्वक सुनः जुन दिन पुकार्नेवालाले नजिकको ठाउँबाट पुकार्नेछ,

يَّوْمَ يَسْمَعُوْنَ الصَّيْحَةَ بِالْحَقِّ ذٰلِكَ يَوْمُ الْخُرُوْجِ ۝٤٢

४२) जुन दिन मानिसहरूले त्यो ठूलो चित्कार निश्चित तौरले सुनिहाल्नेछन् । त्यही (चिहानबाट) निस्किने दिन हुनेछ ।

اِنَّا نَحْنُ نُحْيٖ وَنُمِيْتُ وَاِلَيْنَا الْمَصِيْرُ ۝٤٣

४३) हामीले नै जीवित गर्दछौं र हामीले नै मार्दछौं र हाम्रै पासमा फर्केर आउनु छ ।

يَوْمَ تَشَقَّقُ الْاَرْضُ عَنْهُمْ سِرَاعًا ذٰلِكَ حَشْرٌ عَلَيْنَا يَسِيْرٌ ۝٤٤

४४) जुन दिन जमीन फाट्नेछ र उनीहरू झट्ट निस्किहाल्नेछन् । यो एकत्रित गर्नु हामीलाई बिल्कुल सरल छ ।

نَحْنُ اَعْلَمُ بِمَا يَقُوْلُوْنَ وَمَآ اَنْتَ عَلَيْهِمْ بِجَبَّارٍ فَذَكِّرْ بِالْقُرْاٰنِ مَنْ يَّخَافُ وَعِيْدِ ۝٤٥

४५) यी मानिसहरूले जे जति भन्दछन्, हामीलाई राम्ररी थाहा छ र तपाईले उनीहरूमाथि जबरजस्ती गर्नेवाला होइनौ । तसर्थ जो हाम्रो (सजायको) धम्कीबाट डर मान्छन्, कुरआनको माध्यमबाट उनीहरूलाई सम्झाउँदै गर्नुस् ।

# सूरतुज् ज़ारियात-५१




सूरतुज् ज़ारियात मक्की हो, यसमा (६०) साठी आयत र (३) तीन रुकूअ्हरू छन् ।

| | |
|---|---|
| **शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।** | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ |
| १) कसम छ उडाएर छरिदिने (वायु) को । | وَالذّٰرِيٰتِ ذَرْوًا ۝١ |
| २) अनि भारी उचाल्नेहरूको, | فَالْحٰمِلٰتِ وِقْرًا ۝٢ |
| ३) फेरि विस्तारै चल्नेहरूको । | فَالْجٰرِيٰتِ يُسْرًا ۝٣ |
| ४) अनि कामहरूलाई वितरित गर्नेहरूको । | فَالْمُقَسِّمٰتِ اَمْرًا ۝٤ |
| ५) विश्वास गर जसको कि तिमीलाई वचन दिइन्छ, त्यो साँचो छ । | اِنَّمَا تُوْعَدُوْنَ لَصَادِقٌ ۝٥ |
| ६) र अवश्य न्याय इन्साफ हुने छ । | وَّاِنَّ الدِّيْنَ لَوَاقِعٌ ۝٦ |
| ७) त्यस आकाशको शपथ जसमा विभिन्न मार्गहरू छन् । | وَالسَّمَآءِ ذَاتِ الْحُبُكِ ۝٧ |
| ८) (हे मक्कावालाहरू !) तिमी निश्चित रूपले एउटा विवादको कुरामा परेका छौ । | اِنَّكُمْ لَفِيْ قَوْلٍ مُّخْتَلِفٍ ۝٨ |
| ९) यसबाट त्यही विमुख हुन्छ, जो अल्लाहको तर्फबाट विमुख हुन्छ । | يُّؤْفَكُ عَنْهُ مَنْ اُفِكَ ۝٩ |
| १०) अट्कलबाजी गर्नेहरू नष्ट गरिए । | قُتِلَ الْخَرّٰصُوْنَ ۝١٠ |
| ११) जो भ्रममा छन् र बिर्सेका छन् । | الَّذِيْنَ هُمْ فِيْ غَمْرَةٍ سَاهُوْنَ ۝١١ |
| १२) सोध्छन् कि प्रतिफलको दिन कहिल्यै आउनेछ ? | يَسْـَٔلُوْنَ اَيَّانَ يَوْمُ الدِّيْنِ ۝١٢ |

१३) हो, यो त्यो दिन हो (जब) उनलाई आगोमा तताइनेछ ।

يَوْمَ هُمْ عَلَى النَّارِ يُفْتَنُونَ ﴿١٣﴾

१४) अब आफ्नो उपद्रवको स्वाद चाख । यो त्यही हो, जसको निम्ति तिमीले हतार गर्ने गर्दथ्यौ ।

ذُوقُوا فِتْنَتَكُمْ ۖ هَٰذَا الَّذِي كُنْتُمْ بِهِ تَسْتَعْجِلُونَ ﴿١٤﴾

१५) निश्चय नै संयमीहरू स्वर्गका बगैंचाहरूमा हुनेछन् ।

إِنَّ الْمُتَّقِينَ فِي جَنَّاتٍ وَعُيُونٍ ﴿١٥﴾

१६) र जुन जुन कुराहरू उनका पालनकर्ताले दिइराखेको हुन्छ उनीले लिइराखेका हुनेछन् । निश्चय नै उनीहरू त यसभन्दा पहिला नै असल कार्य गर्नेहरू थिए ।

آخِذِينَ مَا آتَاهُمْ رَبُّهُمْ ۚ إِنَّهُمْ كَانُوا قَبْلَ ذَٰلِكَ مُحْسِنِينَ ﴿١٦﴾

१७) उनीहरू रातको थोरै भागमा सुत्ने गर्दथे,

كَانُوا قَلِيلًا مِنَ اللَّيْلِ مَا يَهْجَعُونَ ﴿١٧﴾

१८) र रातको अन्तिम पहर (भोर)मा क्षमा प्रार्थना गर्ने गर्दथे ।

وَبِالْأَسْحَارِ هُمْ يَسْتَغْفِرُونَ ﴿١٨﴾

१९) र उनको सम्पत्तिमा माँग्नेवाला र निर्धनहरूको हक थियो ।

وَفِي أَمْوَالِهِمْ حَقٌّ لِلسَّائِلِ وَالْمَحْرُومِ ﴿١٩﴾

२०) र ईमान राख्नेवालाहरूको निम्ति धरतीमा धेरै निशानीहरू छन् ।

وَفِي الْأَرْضِ آيَاتٌ لِلْمُوقِنِينَ ﴿٢٠﴾

२१) र स्वयं तिम्रो व्यक्तित्वमा पनि त के तिमीले देख्दैनौ ?

وَفِي أَنْفُسِكُمْ ۚ أَفَلَا تُبْصِرُونَ ﴿٢١﴾

२२) र तिम्रो रोजी र जुन कुराको तिमीलाई वचन दिइएको छ सबै आकाशमा छ ।

وَفِي السَّمَاءِ رِزْقُكُمْ وَمَا تُوعَدُونَ ﴿٢٢﴾

२३) तसर्थ आकाशहरू र धरतीको स्वामीको कसम त्यो विश्वास योग्य

فَوَرَبِّ السَّمَاءِ وَالْأَرْضِ إِنَّهُ لَحَقٌّ مِثْلَ مَا أَنَّكُمْ تَنْطِقُونَ ﴿٢٣﴾

छ त्यसतै जुन प्रकारले तिमी कुरा गर्दछौ ।

هَلْ أَتٰىكَ حَدِيْثُ ضَيْفِ إِبْرٰهِيْمَ الْمُكْرَمِيْنَ ﴿٢٤﴾

२४) के इब्राहीमका प्रतिष्ठित अतिथिहरूको वृत्तान्त पनि तिमी छेउ पुगेको छ ।

إِذْ دَخَلُوْا عَلَيْهِ فَقَالُوْا سَلٰمًا ۖ قَالَ سَلٰمٌ ۚ قَوْمٌ مُّنْكَرُوْنَ ﴿٢٥﴾

२५) जब उनीहरू उनको पासमा आए तब भने: "सलाम छ तिमी माथि" उनले पनि भने "सलाम छ तपाईहरूलाई पनि" । (देखेपछि) मनमा भने (यी त) अपरिचित मानिसहरू हुन् ।

فَرَاغَ إِلٰى أَهْلِهٖ فَجَآءَ بِعِجْلٍ سَمِيْنٍ ﴿٢٦﴾

२६) तब आफ्नो घर गई एउटा (पोलिएको) मोटो बाछो(को मासु) ल्याए ।

فَقَرَّبَهٗ إِلَيْهِمْ قَالَ أَلَا تَأْكُلُوْنَ ﴿٢٧﴾

२७) र (खानाको निम्ति) उनीहरूको अगाडि राखिदिए । र भन्न थाले कि तपाईहरू किन खानुहुन्न ?

فَأَوْجَسَ مِنْهُمْ خِيْفَةً ۖ قَالُوْا لَا تَخَفْ ۖ وَبَشَّرُوْهُ بِغُلٰمٍ عَلِيْمٍ ﴿٢٨﴾

२८) अनि उनले मनैमनमा उनीहरूसित डर महसूस गरे । उनीहरूले भने कि डर नमान्नुस् र उनलाई (इब्राहीम अ.लाई) एउटा ज्ञानवान केटोको मंगलसूचना दिए ।

فَأَقْبَلَتِ امْرَأَتُهٗ فِيْ صَرَّةٍ فَصَكَّتْ وَجْهَهَا وَقَالَتْ عَجُوْزٌ عَقِيْمٌ ﴿٢٩﴾

२९) अनि उनकी स्वास्नी आश्चार्य चकित भई अगाडि बढिन् र आफ्नो निधारमा पिट्दै भनिन् कि म त एक बूढी र बाँझ हूँ ?

قَالُوْا كَذٰلِكِ ۙ قَالَ رَبُّكِ ۖ إِنَّهٗ هُوَ الْحَكِيْمُ الْعَلِيْمُ ﴿٣٠﴾

३०) उनीहरूले भने हो यस्तै नै तिम्रो पालनकर्ताको आदेश छ । नि:संदेह ऊ बडो तत्वदर्शी र ज्ञानवान छ ।

قَالَ فَمَا خَطْبُكُمْ أَيُّهَا الْمُرْسَلُونَ ٣١

३१) (इब्राहीम (अ.)ले) भनेः कि “हे अल्लाहका दूत तिम्रो अभिप्राय के हो ?”

قَالُوٓا إِنَّآ أُرْسِلْنَآ إِلَىٰ قَوْمٍ مُّجْرِمِينَ ٣٢

३२) उनीहरूले भनेः कि “हामीहरू अपराधी समूह तर्फ पठाइएका हौं,

لِنُرْسِلَ عَلَيْهِمْ حِجَارَةً مِّن طِينٍ ٣٣

३३) ताकि उनीहरूमाथि कंकडी बर्साऔं,

مُّسَوَّمَةً عِندَ رَبِّكَ لِلْمُسْرِفِينَ ٣٤

३४) जो तपाईको पालनकर्ताको तर्फबाट निशान लगाइएका छन् ती सीमाको अतिक्रमणकारीको लागि ।”

فَأَخْرَجْنَا مَن كَانَ فِيهَا مِنَ الْمُؤْمِنِينَ ٣٥

३५) अनि त्यहाँ जति ईमानवालाहरू थिए उनीहरूलाई, हामीले निकालिहाल्यौं,

فَمَا وَجَدْنَا فِيهَا غَيْرَ بَيْتٍ مِّنَ الْمُسْلِمِينَ ٣٦

३६) र हामीले त्यहाँ मुसलमानको एउटा घर मात्र भेट्टायौं ।

وَتَرَكْنَا فِيهَآ ءَايَةً لِّلَّذِينَ يَخَافُونَ الْعَذَابَ الْأَلِيمَ ٣٧

३७) र जुन मानिसहरू दुःखद् यातनासित डराउँदछन्, उनीहरूका निम्ति त्यहाँ निशानी छोडिदियौं ।

وَفِي مُوسَىٰٓ إِذْ أَرْسَلْنَٰهُ إِلَىٰ فِرْعَوْنَ بِسُلْطَٰنٍ مُّبِينٍ ٣٨

३८) र “मूसा(अ.)” (को वृतान्त) मा पनि (निशानी छ) जब कि हामीले उनलाई फिरऔनतिर स्पष्ट प्रमाणकासाथ पठायौं ।

فَتَوَلَّىٰ بِرُكْنِهِۦ وَقَالَ سَٰحِرٌ أَوْ مَجْنُونٌ ٣٩

३९) तब त्यसले आफ्नो शक्ति (घमण्ड) ले विमुख भइहाल्यो र भन्नथाल्यो, यो त जादूगर हो वा दिवाना,

فَأَخَذْنَٰهُ وَجُنُودَهُۥ فَنَبَذْنَٰهُمْ فِي الْيَمِّ وَهُوَ مُلِيمٌ ٤٠

४०) तब हामीले उसलाई र उसका लावालस्करलाई समातिहाल्यौं र उनीहरूलाई समुन्द्रमा फ्याकिहाल्यौं र त्यसको काम नै निन्दनीय थियो ।

| | |
|---|---|
| ४१) यस्तै "आद" (को वृतान्त) मा पनि (निशानी छ), जब हामीले उनीहरूमाथि अशुभ वायु चलायौं । | وَفِيْ عَادٍ اِذْ اَرْسَلْنَا عَلَيْهِمُ الرِّيْحَ الْعَقِيْمَ ﴿٤١﴾ |
| ४२) त्यो जुन जुन कुरामाथि चल्यो, त्यसलाई जिर्णशिर्ण हाड जस्तो चूरा-चूरा गरेर छाडिदियो । | مَا تَذَرُ مِنْ شَيْءٍ اَتَتْ عَلَيْهِ اِلَّا جَعَلَتْهُ كَالرَّمِيْمِ ﴿٤٢﴾ |
| ४३) र "समूद" (को वृतान्त) मा पनि (निशानीछ) जब उनीसित भनियो कि एक समयसम्म फाइदा उठाइहाल । | وَفِيْ ثَمُوْدَ اِذْ قِيْلَ لَهُمْ تَمَتَّعُوْا حَتّٰى حِيْنٍ ﴿٤٣﴾ |
| ४४) तर उनीहरूले आफ्नो पालनकर्ताको आदेशको उल्लंघन गरे, अनि हेर्दा हेर्दै उनीहरूलाई कडक चट्याङ्गले समाप्त गरिदियो । | فَعَتَوْا عَنْ اَمْرِ رَبِّهِمْ فَاَخَذَتْهُمُ الصّٰعِقَةُ وَهُمْ يَنْظُرُوْنَ ﴿٤٤﴾ |
| ४५) अनि उनीहरू न उठ्न सके र नत बदला लिन सके । | فَمَا اسْتَطَاعُوْا مِنْ قِيَامٍ وَّمَا كَانُوْا مُنْتَصِرِيْنَ ﴿٤٥﴾ |
| ४६) र यसभन्दा पहिला (हामीले) "नूह(अ.)को" जातिबन्धुलाई पनि (समाप्त गरिसकेका थियौं) निश्चय नै उनीहरू ठूलो अवज्ञाकारी थिए । | وَقَوْمَ نُوْحٍ مِّنْ قَبْلُ ۭ اِنَّهُمْ كَانُوْا قَوْمًا فٰسِقِيْنَ ﴿٤٦﴾ |
| ४७) र आकाशलाई हामीले आफ्नो शक्तिद्वारा बनायौं र निश्चित रूपले हामीमा ठूलो सामर्थ्य छ । | وَالسَّمَاۗءَ بَنَيْنٰهَا بِاَيْىدٍ وَّاِنَّا لَمُوْسِعُوْنَ ﴿٤٧﴾ |
| ४८) र धरतीलाई हामीले भूईं बनायौं तसर्थ (हेर) हामीले कति राम्ररी बनायौं । | وَالْاَرْضَ فَرَشْنٰهَا فَنِعْمَ الْمٰهِدُوْنَ ﴿٤٨﴾ |
| ४९) र हामीले प्रत्येक कुराको जोडा बनायौं ताकि तिमीले उपदेश ग्रहण गर । | وَمِنْ كُلِّ شَيْءٍ خَلَقْنَا زَوْجَيْنِ لَعَلَّكُمْ تَذَكَّرُوْنَ ﴿٤٩﴾ |

فَفِرُّوٓا إِلَى ٱللَّهِ ۖ إِنِّى لَكُم مِّنْهُ نَذِيرٌ مُّبِينٌ ﴿٥٠﴾

५०) अतः तिमी अल्लाहतिर छिटै लाग । निश्चयनै म उसको तर्फबाट तिम्रो निम्ति एउटा प्रत्यक्ष सावधान गर्नेवाला हूँ ।

وَلَا تَجْعَلُوا مَعَ ٱللَّهِ إِلَٰهًا ءَاخَرَ ۖ إِنِّى لَكُم مِّنْهُ نَذِيرٌ مُّبِينٌ ﴿٥١﴾

५१) र अल्लाहको साथ अन्य कसैलाई पूज्य नबनाऊ । म उसको तर्फबाट तिम्रो निम्ति एउटा प्रत्यक्ष डर देखाउने वाला हूँ ।

كَذَٰلِكَ مَآ أَتَى ٱلَّذِينَ مِن قَبْلِهِم مِّن رَّسُولٍ إِلَّا قَالُوا سَاحِرٌ أَوْ مَجْنُونٌ ﴿٥٢﴾

५२) यस्तै यिनीहरूभन्दा पहिलेका मानिसहरूको पासमा जुन पैगम्बर आउँथ्यो उनीहरूले उनलाई जादूगर वा दीवाना भन्दथे ।

أَتَوَاصَوْا بِهِۦ ۚ بَلْ هُمْ قَوْمٌ طَاغُونَ ﴿٥٣﴾

५३) के यिनीहरूले एक अर्कालाई यस कुराको निम्ति इच्छाउँदै (उपदेश दिदै) गएका छन् ? (होइन) बरु यिनीहरू सबै अवज्ञाकारी हुन् ।

فَتَوَلَّ عَنْهُمْ فَمَآ أَنتَ بِمَلُومٍ ﴿٥٤﴾

५४) तपाईले यिनीहरूबाट पन्छिनुस् । तपाईलाई दोषारोपण हुने छैन ।

وَذَكِّرْ فَإِنَّ ٱلذِّكْرَىٰ تَنفَعُ ٱلْمُؤْمِنِينَ ﴿٥٥﴾

५५) र उपदेश गर्दै गर्नुस् किनकि उपदेशले मोमिनहरूलाई लाभ पुऱ्याउँछ ।

وَمَا خَلَقْتُ ٱلْجِنَّ وَٱلْإِنسَ إِلَّا لِيَعْبُدُونِ ﴿٥٦﴾

५६) मैले जिन्न र मानिसहरूलाई यसकारण मात्र सृष्टि गरेको छु ताकि मेरो उपासना गरुन् ।

مَآ أُرِيدُ مِنْهُم مِّن رِّزْقٍ وَمَآ أُرِيدُ أَن يُطْعِمُونِ ﴿٥٧﴾

५७) म उनीहरूबाट जीविका चाहन्न र न यो चाहन्छु कि मलाई खुवाऊन् ।

إِنَّ ٱللَّهَ هُوَ ٱلرَّزَّاقُ ذُو ٱلْقُوَّةِ ٱلْمَتِينُ ﴿٥٨﴾

५८) अल्लाह आफै जीविका प्रदान गर्नेवाला शक्तिशाली, दृढ छ ।

فَإِنَّ لِلَّذِينَ ظَلَمُوا ذَنُوبًا مِّثْلَ ذَنُوبِ أَصْحَابِهِمْ فَلَا يَسْتَعْجِلُونِ ﴿٥٩﴾

५९) अतः जसले अत्याचार गरेका छन् उनीहरूका निम्ति पनि सजायको भाग निर्धारित छ, जुन प्रकार उनीहरूका साथीहरूको निम्ति निर्धारित थियो । अतः उनीहरू मसित हतार नगरुन् ।

فَوَيْلٌ لِّلَّذِينَ كَفَرُوا مِن يَوْمِهِمُ الَّذِي يُوعَدُونَ ﴿٦٠﴾

६०) जुन दिनको यी काफिरहरूसित वाचा गरिन्छ, त्यसबाट उनको निम्ति खराबी छ ।



## सूरतुत्तूर-५२




सूरतुत्तूर मक्की हो यसमा ४९ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالطُّوْرِ ۙ﴿١﴾

१) तूर (पहाड़) को कसम ।

وَكِتٰبٍ مَّسْطُوْرٍ ۙ﴿٢﴾

२) र किताबको पनि जो लेखिएको छ ।

فِيْ رَقٍّ مَّنْشُوْرٍ ۙ﴿٣﴾

३) खुल्ला पानाहरूमा,

وَّالْبَيْتِ الْمَعْمُوْرِ ۙ﴿٤﴾

४) र आबाद घरको क़सम ।

وَالسَّقْفِ الْمَرْفُوْعِ ۙ﴿٥﴾

५) र उच्च छानाको (कसम) ।

وَالْبَحْرِ الْمَسْجُوْرِ ۙ﴿٦﴾

६) र भड्काइएको समुन्द्रको (कसम) ।

اِنَّ عَذَابَ رَبِّكَ لَوَاقِعٌ ۙ﴿٧﴾

७) निश्चयनै तपाईको पालनकर्ताको यातना भएरै रहने छ ।

مَّا لَهٗ مِنْ دَافِعٍ ۙ﴿٨﴾

८) उसलाई कसैले रोक्न सक्ने छैन ।

يَّوْمَ تَمُوْرُ السَّمَآءُ مَوْرًا ۙ﴿٩﴾

९) जुन दिन आकाश कम्पित हुनेछ ।

وَّتَسِيْرُ الْجِبَالُ سَيْرًا ۭ﴿١٠﴾

१०) र पहाडहरू चलायमान हुनेछन्,

فَوَيْلٌ يَّوْمَىِٕذٍ لِّلْمُكَذِّبِيْنَ ۙ﴿١١﴾

११) त्यसदिन इन्कार गर्नेहरूको निम्ति पूरै तिरस्कार हुनेछ ।

الَّذِيْنَ هُمْ فِيْ خَوْضٍ يَّلْعَبُوْنَ ۘ﴿١٢﴾

१२) जो सतही झूठा कुरामा रमाई रहेका छन् ।

يَوْمَ يُدَعُّوْنَ اِلٰى نَارِ جَهَنَّمَ دَعًّا ۭ﴿١٣﴾

१३) जुन दिन उनीहरू नर्कको आगोतिर धकेली लगिनेछन् ।

هٰذِهِ النَّارُ الَّتِيْ كُنْتُمْ بِهَا تُكَذِّبُوْنَ ﴿١٤﴾

१४) यही त्यो नर्कको आगो हो, जसलाई तिमीले असत्य ठान्दथ्यौ ।

१५) त के यो जादू हो अथवा तिमीले देख्दैनौ ?

أَفَسِحْرٌ هَٰذَآ أَمْ أَنتُمْ لَا تُبْصِرُونَ ﴿١٥﴾

१६) यसमा प्रवेश गरिहाल र धैर्य गर वा नगर, तिम्रो निम्ति समान छ, जुन काम तिमीले गर्ने गर्दथ्यौ, त्यसैको तिमीलाई प्रतिफल दिइने छ ।

ٱصْلَوْهَا فَٱصْبِرُوٓا۟ أَوْ لَا تَصْبِرُوا۟ سَوَآءٌ عَلَيْكُمْ ۖ إِنَّمَا تُجْزَوْنَ مَا كُنتُمْ تَعْمَلُونَ ﴿١٦﴾

१७) जो संयमी छन्, उनीहरू स्वर्गमा र अनुकम्पाहरूमा रहनेछन् ।

إِنَّ ٱلْمُتَّقِينَ فِى جَنَّٰتٍ وَنَعِيمٍ ﴿١٧﴾

१८) जो जति उनीहरूको पालनकर्ताले उनीहरूलाई प्रदान गरेको छ त्यसबाट आनन्दित भइरहनेछन्, र उनको पालनकर्ताले उनीहरूलाई नर्कको सजायबाट बचाइहाल्यो ।

فَٰكِهِينَ بِمَآ ءَاتَىٰهُمْ رَبُّهُمْ وَوَقَىٰهُمْ رَبُّهُمْ عَذَابَ ٱلْجَحِيمِ ﴿١٨﴾

१९) तिमी आफ्ना कर्महरूको प्रतिफल स्वरूप, जुन तिमी गर्दथ्यौ आनन्दसित खाऊ र पिऊ,

كُلُوا۟ وَٱشْرَبُوا۟ هَنِيٓـًٔۢا بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿١٩﴾

२०) पंक्तिबद्ध बिछ्याइएका शानदार तख्ताहरूमा तकिया लगाएर, र हामीले ठूला-ठूला आँखा भएकी सुन्दरी (अप्सरा)हरूसंग उनीहरूको विवाह गरिदिएका छौं ।

مُتَّكِـِٔينَ عَلَىٰ سُرُرٍ مَّصْفُوفَةٍ ۖ وَزَوَّجْنَٰهُم بِحُورٍ عِينٍ ﴿٢٠﴾

२१) र जसले ईमान ल्याए र उनका सन्तानहरूले पनि ईमानमा उनको अनुशरण गरे, हामीले उनको सन्तानहरूलाई पनि उनीहरूसम्म पुर्याइदिनेछौं र उनका कर्महरूबाट केही कम गर्ने छैनौं । हर व्यक्ति आफ्नो कर्म-जालमा फँसेको छ ।

وَٱلَّذِينَ ءَامَنُوا۟ وَٱتَّبَعَتْهُمْ ذُرِّيَّتُهُم بِإِيمَٰنٍ أَلْحَقْنَا بِهِمْ ذُرِّيَّتَهُمْ وَمَآ أَلَتْنَٰهُم مِّنْ عَمَلِهِم مِّن شَىْءٍ ۚ كُلُّ ٱمْرِئٍۭ بِمَا كَسَبَ رَهِينٌ ﴿٢١﴾

२२) र हामीले उनीहरूका लागि स्वादिलो फलहरू र मनपराएका मासु प्रयाप्त प्रदान गर्नेछौं ।

وَأَمْدَدْنَاهُم بِفَاكِهَةٍ وَلَحْمٍ مِّمَّا يَشْتَهُونَ ﴿٢٢﴾

२३) त्यहाँ उनीहरू एक-अर्कासित पान-पत्र (मदिरा) आदान प्रदान गर्नेछन्, जसमा न कुनै फजूलपना हुनेछ न कुनै पाप ।

يَتَنَازَعُونَ فِيهَا كَأْسًا لَّا لَغْوٌ فِيهَا وَلَا تَأْثِيمٌ ﴿٢٣﴾

२४) उनीहरूको आसपासमा नवयुवक सेवकहरू हिंडिराख्नेछन् जो सुरक्षित मोतीहरू जस्तो हुनेछन् ।

وَيَطُوفُ عَلَيْهِمْ غِلْمَانٌ لَّهُمْ كَأَنَّهُمْ لُؤْلُؤٌ مَّكْنُونٌ ﴿٢٤﴾

२५) र एक अर्कातिर ध्यान दिएर आपसमा कुराकानी गर्नेछन् ।

وَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَسَاءَلُونَ ﴿٢٥﴾

२६) भन्नेछन्: कि यसभन्दा पहिला हामी आफ्ना घरहरूमा (अल्लाहसित) धेरै डराउने तर्सने गर्दथ्यौं ।

قَالُوا إِنَّا كُنَّا قَبْلُ فِي أَهْلِنَا مُشْفِقِينَ ﴿٢٦﴾

२७) अनि अल्लाहले हामीमाथि ठूलो अनुकम्पा गर्‍यो र हामीलाई बिषालु लूको यातनाबाट बचाइहाल्यो ।

فَمَنَّ اللَّهُ عَلَيْنَا وَوَقَانَا عَذَابَ السَّمُومِ ﴿٢٧﴾

२८) यसभन्दा पहिला नै हामीले उसको (अल्लाहको) प्रार्थना गर्ने गर्दथ्यौं । नि:सन्देह ऊ अनुकम्पा गर्नेवाला दयावान् छ ।

إِنَّا كُنَّا مِن قَبْلُ نَدْعُوهُ ۖ إِنَّهُ هُوَ الْبَرُّ الرَّحِيمُ ﴿٢٨﴾

२९) अत: (हे पैगम्बर) तपाई सम्झाउँदै गर्नुस् किनभने तपाई । आफ्नो पालनकर्ताको कृपाले न शकुन विचार गर्नेवाला र न त पागल हुनु हुन्छ ।

فَذَكِّرْ فَمَا أَنتَ بِنِعْمَتِ رَبِّكَ بِكَاهِنٍ وَلَا مَجْنُونٍ ﴿٢٩﴾

३०) के इन्कार गर्नेहरूले भन्दछन्: कि त्यो कवि हो जसको निम्ति हामी कालचक्र अर्थात मृत्युको प्रतिक्षा गरिराखेका छौं ।

أَمْ يَقُولُونَ شَاعِرٌ نَّتَرَبَّصُ بِهِۦ رَيْبَ ٱلْمَنُونِ ﴿٣٠﴾

३१) भनिदिनुस् कि तिमी प्रतिक्षा गर्दैजाऊ । म पनि तिम्रो साथमा प्रतिक्षा गर्दैछु ।

قُلْ تَرَبَّصُوا۟ فَإِنِّى مَعَكُم مِّنَ ٱلْمُتَرَبِّصِينَ ﴿٣١﴾

३२) के उनीहरूको बुद्धिले उनीहरूलाई यही सिकाउँदछ वा उनीहरू अट्टेरी नै हुन् ।

أَمْ تَأْمُرُهُمْ أَحْلَٰمُهُم بِهَٰذَآ ۚ أَمْ هُمْ قَوْمٌ طَاغُونَ ﴿٣٢﴾

३३) के इन्कारीहरू भन्दछन् कि यस पैगम्बरले (कुरआनलाई) स्वयं रचिहालेको छ ? (होइन) साँचो कुरा यो छ कि तिनीहरूमा ईमान छैन ।

أَمْ يَقُولُونَ تَقَوَّلَهُۥ ۚ بَل لَّا يُؤْمِنُونَ ﴿٣٣﴾

३४) यदि यिनीहरू साँचो छन् भने यस्तो एउटै वाक्य यिनीहरूले पनि ल्याऊन् ।

فَلْيَأْتُوا۟ بِحَدِيثٍ مِّثْلِهِۦٓ إِن كَانُوا۟ صَٰدِقِينَ ﴿٣٤﴾

३५) के यिनीहरूले कसैले सृष्टि नगरी आफै जन्मिहालेका हुन् वा स्वयं स्रष्टा हुन् ?

أَمْ خُلِقُوا۟ مِنْ غَيْرِ شَىْءٍ أَمْ هُمُ ٱلْخَٰلِقُونَ ﴿٣٥﴾

३६) के उनीहरूले नै आकाशहरू र धरतीको सृष्टि गरेका छन् ? (होइन) बरु यिनीहरू ईमान नल्याउने मानिस हुन् ।

أَمْ خَلَقُوا۟ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ ۚ بَل لَّا يُوقِنُونَ ﴿٣٦﴾

३७) वा के उनीहरूको पासमा तिम्रो पालनकर्ताको खजाना छ ? वा उनीहरू नै त्यसको (ख़ाज़ानाको) रक्षक हुन् ?

أَمْ عِندَهُمْ خَزَآئِنُ رَبِّكَ أَمْ هُمُ ٱلْمُصَيْطِرُونَ ﴿٣٧﴾

३८) वा के उनको पासमा कुनै सिंढी छ जसमाथि चढेर उनीहरू सुन्दछन् ? (यदि यस्तो छ) भने उनीहरू मध्ये जसले सुनिराखेको छ उसले त्यसबारेमा स्पष्ट प्रमाण ल्याओस् ।

أَمْ لَهُمْ سُلَّمٌ يَّسْتَمِعُوْنَ فِيْهِ ۚ فَلْيَأْتِ مُسْتَمِعُهُمْ بِسُلْطٰنٍ مُّبِيْنٍ ﴿٣٨﴾

३९) वा के अल्लाहका लागि सबै छोरीहरू छन्, र तिम्रा निम्ति छोराहरू ?

أَمْ لَهُ الْبَنٰتُ وَلَكُمُ الْبَنُوْنَ ﴿٣٩﴾

४०) वा तपाईले उनीहरूसित कुनै पारिश्रमिक माग्नु हुन्छ जसको बोझले यिनीहरू थिचिदै गएका छन् ?

أَمْ تَسْـَٔلُهُمْ أَجْرًا فَهُمْ مِّنْ مَّغْرَمٍ مُّثْقَلُوْنَ ﴿٤٠﴾

४१) के उनीहरूसंग अदृश्यको ज्ञान छ कि उनीहरू त्यसलाई लेखिहाल्छन् ?

أَمْ عِنْدَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُوْنَ ﴿٤١﴾

४२) के उनीहरू कुनै चाल चल्न चाहन्छन् ? (तर) विश्वास गर्नु काफिर त स्वयम् दाउको चपेटमा पर्नेवाला छन् ।

أَمْ يُرِيْدُوْنَ كَيْدًا ۗ فَالَّذِيْنَ كَفَرُوْا هُمُ الْمَكِيْدُوْنَ ﴿٤٢﴾

४३) के अल्लाह बाहेक उनीहरूको अर्को कोही पूज्य छ ? (होइन) अल्लाह उनीहरूको शिर्कबाट पवित्र छ ।

أَمْ لَهُمْ إِلٰهٌ غَيْرُ اللّٰهِ ۗ سُبْحٰنَ اللّٰهِ عَمَّا يُشْرِكُوْنَ ﴿٤٣﴾

४४) यदि उनीहरू आकाशको कुनै टुक्रा खसिराखेको देख्छन् भने, भन्नेछन् कि यो त पत्र माथि पत्र परेको बादल हो ।

وَإِنْ يَّرَوْا كِسْفًا مِّنَ السَّمَآءِ سَاقِطًا يَّقُوْلُوْا سَحَابٌ مَّرْكُوْمٌ ﴿٤٤﴾

४५) तसर्थ उनीहरूलाई छाडिदेऊ, यहाँसम्म कि त्यो दिनको सामना होस् जसमा उनीहरू बेहोश पारिने छन् ।

فَذَرْهُمْ حَتّٰى يُلٰقُوْا يَوْمَهُمُ الَّذِيْ فِيْهِ يُصْعَقُوْنَ ﴿٤٥﴾

يَوْمَ لَا يُغْنِي عَنْهُمْ كَيْدُهُمْ شَيْئًا وَلَا هُمْ يُنْصَرُونَ ﴿٤٦﴾

४६) जुन दिन उनको कुनै दाउपेच उनको काम आउँदैन र न त कहींबाट सहायता प्राप्त गर्नेछन् ।

وَإِنَّ لِلَّذِينَ ظَلَمُوا عَذَابًا دُونَ ذَٰلِكَ وَلَٰكِنَّ أَكْثَرَهُمْ لَا يَعْلَمُونَ ﴿٤٧﴾

४७) निःसन्देह अत्याचारीहरूका निम्ति यस बाहेक अरु यातना पनि छ, तर उनीहरूमध्ये अक्सरले बुभ्दैनन् ।

وَاصْبِرْ لِحُكْمِ رَبِّكَ فَإِنَّكَ بِأَعْيُنِنَا وَسَبِّحْ بِحَمْدِ رَبِّكَ حِينَ تَقُومُ ﴿٤٨﴾

४८) तपाईले आफ्नो पालनकर्ताको आदेशको प्रतिक्षामा धैर्य गर्नुस्, तपाई त हाम्रो आँखा अगाडि हुनु हुन्छ । बिहान उठ्ने बेला आफ्नो पालनकर्ताको प्रशंसाको वर्णन गर्नुस् ।

وَمِنَ اللَّيْلِ فَسَبِّحْهُ وَإِدْبَارَ النُّجُومِ ﴿٤٩﴾

४९) र राती पनि उसको गुण-गान गर्ने गर्नुस् र ताराहरू अस्ताउँदा पनि ।



# सूरतुन् नज्म-५३




सूरतुन् नज्म मक्की हो, यसमा ६२ आयतहरू र ३ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

१) ताराको कसम, जब त्यो तल खस्छ ।

وَالنَّجْمِ إِذَا هَوَىٰ ﴿١﴾

२) तिम्रो साथी (मोहम्मद स.) न त बाटो बिर्सेका छन् न भ्रमित छन् ।

مَا ضَلَّ صَاحِبُكُمْ وَمَا غَوَىٰ ﴿٢﴾

३) र उनी आफ्नो इच्छाले केही भन्दैनन् ।

وَمَا يَنطِقُ عَنِ الْهَوَىٰ ﴿٣﴾

४) त्यो त मात्र वह्य हो जुन (उनीमाथि) पठाइँदै छ ।

إِنْ هُوَ إِلَّا وَحْيٌ يُوحَىٰ ﴿٤﴾

५) उनलाई ठूलो शक्तिवाला अल्लाहको दूत (जिब्रील) ले सिकाएको छ ।

عَلَّمَهُ شَدِيدُ الْقُوَىٰ ﴿٥﴾

६) त्यो शक्तिशाली छ अनि उनी सिधा ठाडो भइहाले,

ذُو مِرَّةٍ فَاسْتَوَىٰ ﴿٦﴾

७) र उनी आकाशको उच्चतम भागमा थिए ।

وَهُوَ بِالْأُفُقِ الْأَعْلَىٰ ﴿٧﴾

८) अनि उनी निकट भए र उतरी आए,

ثُمَّ دَنَا فَتَدَلَّىٰ ﴿٨﴾

९) अब कमानको बीचको दूरी बाँकी रह्यो वा त्यो भन्दा पनि कम ।

فَكَانَ قَابَ قَوْسَيْنِ أَوْ أَدْنَىٰ ﴿٩﴾

१०) अनि अल्लाहले आफ्नो दासतिर जुन “वह्य” पठाउनु थियो पठायो ।

فَأَوْحَىٰ إِلَىٰ عَبْدِهِ مَا أَوْحَىٰ ﴿١٠﴾

مَا كَذَبَ الْفُؤَادُ مَا رَاٰى ﴿١١﴾

११) जे जति उनले देखे, उनको हृदयले त्यसलाई झूठ ठानेन ।

اَفَتُمٰرُوْنَهٗ عَلٰى مَا يَرٰى ﴿١٢﴾

१२) के जे जति उनी देख्छन् तिमी त्यसमा उनीसित विवाद गर्छौ ?

وَلَقَدْ رَاٰهُ نَزْلَةً اُخْرٰى ﴿١٣﴾

१३) र (उनले) उसलाई एकपटक पहिले पनि देखेका थिए ।

عِنْدَ سِدْرَةِ الْمُنْتَهٰى ﴿١٤﴾

१४) अन्तिम सीमाको बैरको रुख नजिक (अर्थात् सिदरतुल मुन्तहा) ।

عِنْدَهَا جَنَّةُ الْمَاْوٰى ﴿١٥﴾

१५) त्यसैको निकटमा बास स्थानवाली जन्नत (जन्नतुलमावा) छ ।

اِذْ يَغْشَى السِّدْرَةَ مَا يَغْشٰى ﴿١٦﴾

१६) त्यस बैरको रुखलाई ढाकेको थियो जे उसमाथि छाइरहेको थियो ।

مَا زَاغَ الْبَصَرُ وَمَا طَغٰى ﴿١٧﴾

१७) उनको दृष्टि नत अरुतिर गयो र न (सीमाभन्दा) अगाडि बढ्यो ।

لَقَدْ رَاٰى مِنْ اٰيٰتِ رَبِّهِ الْكُبْرٰى ﴿١٨﴾

१८) उनले निश्चय नै आफ्ना पालनकर्ताका ठूला-ठूला निशानीहरू मध्ये केही देखे ।

اَفَرَءَيْتُمُ اللّٰتَ وَالْعُزّٰى ﴿١٩﴾

१९) के तिमीहरू लात र उज्ज़ालाई देख्यौ,

وَمَنٰوةَ الثَّالِثَةَ الْاُخْرٰى ﴿٢٠﴾

२०) र तेस्रो अन्तिम मनात (देवीको मूर्ति) लाई ?

اَلَكُمُ الذَّكَرُ وَلَهُ الْاُنْثٰى ﴿٢١﴾

२१) के तिम्रा निम्ति छोराहरू छन् र अल्लाहको निम्ति छोरीहरू ?

تِلْكَ اِذًا قِسْمَةٌ ضِيْزٰى ﴿٢٢﴾

२२) यो विभाजन त बेढंग र अन्यायपूर्ण छ ।

اِنْ هِيَ اِلَّآ اَسْمَآءٌ سَمَّيْتُمُوْهَآ اَنْتُمْ وَاٰبَآؤُكُمْ

२३) उनीहरू त मात्र केही नामहरू हुन्

مَّآ أَنزَلَ ٱللَّهُ بِهَا مِن سُلْطَٰنٍ ۚ إِن يَتَّبِعُونَ إِلَّا ٱلظَّنَّ وَمَا تَهْوَى ٱلْأَنفُسُ ۖ وَلَقَدْ جَآءَهُم مِّن رَّبِّهِمُ ٱلْهُدَىٰٓ ﴿٢٣﴾

जुन तिमीले र तिम्रो बाउबाजेले राखेका छन्, अल्लाहले त उनीहरूको निम्ति कुनै प्रमाण पठाएको छैन । उनीहरू त मात्र अड्कल र आफ्नो इच्छा पूर्तिको पछाडि हिंडिराखेका छन् र निश्चय नै उनको पालनकर्ताको तर्फबाट मार्गदर्शन आइसकेको छ ।

أَمْ لِلْإِنسَٰنِ مَا تَمَنَّىٰ ﴿٢٤﴾

२४) के प्रत्येक मानिसले जुन कुराको कामना गर्दछ, त्यो सबै उसलाई प्राप्त छ ?

فَلِلَّهِ ٱلْءَاخِرَةُ وَٱلْأُولَىٰ ﴿٢٥﴾

२५) आखिर त यस संसारको र परलोकको स्वामी त अल्लाह नै हो ।

وَكَم مِّن مَّلَكٍ فِى ٱلسَّمَٰوَٰتِ لَا تُغْنِى شَفَٰعَتُهُمْ شَيْـًٔا إِلَّا مِنۢ بَعْدِ أَن يَأْذَنَ ٱللَّهُ لِمَن يَشَآءُ وَيَرْضَىٰٓ ﴿٢٦﴾

२६) र आकाशहरूमा यसो धेरै फरिश्ताहरू छन्, कि उनीहरूको सिफारिश कुनै काम लाग्ने छैन, यो अर्कै कुरा छ कि अल्लाह आफ्नो इच्छाले आफू खुशी जसलाई चाहन्छ अनुमति दिन्छ ।

إِنَّ ٱلَّذِينَ لَا يُؤْمِنُونَ بِٱلْءَاخِرَةِ لَيُسَمُّونَ ٱلْمَلَٰٓئِكَةَ تَسْمِيَةَ ٱلْأُنثَىٰ ﴿٢٧﴾

२७) निःसन्देह जुन मानिसहरू आखिरतमाथि ईमान राख्दैनन्, उनीहरूले फरिश्ताहरूलाई स्त्रीहरूको नाम दिन्छन् ।

وَمَا لَهُم بِهِۦ مِنْ عِلْمٍ ۖ إِن يَتَّبِعُونَ إِلَّا ٱلظَّنَّ ۖ وَإِنَّ ٱلظَّنَّ لَا يُغْنِى مِنَ ٱلْحَقِّ شَيْـًٔا ﴿٢٨﴾

२८) जब कि उनीहरूलाई यस विषयमा केही थाहा छैन । उनीहरू त मात्र आफ्नो अड्कलवाजीको पछाडि हिंड्छन् र अनुमानले वास्तविकताको दाँजोमा केही काम गर्दैन ।

فَأَعْرِضْ عَنْ مَّنْ تَوَلّٰى ۙ عَنْ ذِكْرِنَا وَلَمْ يُرِدْ إِلَّا الْحَيٰوةَ الدُّنْيَا ﴿٢٩﴾

२९) तसर्थ जो हाम्रो स्मरणबाट विमुख छन् र संसारिक जीवन बाहेक अरु केही चाहदैनन् । त्यसबाट तपाई पनि विमुख भइहाल्नुस् ।

ذٰلِكَ مَبْلَغُهُمْ مِّنَ الْعِلْمِ ؕ إِنَّ رَبَّكَ هُوَ أَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيلِهٖ وَهُوَ أَعْلَمُ بِمَنِ اهْتَدٰى ﴿٣٠﴾

३०) यस्ता मानिसहरूको ज्ञानको पहुँच यहीँसम्म छ । निश्चय नै तपाईको पालनकर्ता त्यसलाई राम्रोसंग जान्दछ, जो उसको मार्गबाट विचलित भएको छ, र उही नै उसलाई पनि राम्ररी जान्दछ जसले (सोझो) मार्ग अपनायो ।

وَلِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۙ لِيَجْزِيَ الَّذِينَ أَسَاءُوا بِمَا عَمِلُوا وَيَجْزِيَ الَّذِينَ أَحْسَنُوا بِالْحُسْنٰى ﴿٣١﴾

३१) र जे-जति आकाशहरूमा छ र जे-जति धरतीमा छ सबै अल्लाह कै हो, ताकि जसले नराम्रो कर्म गऱ्यो, उनीहरूलाई त्यसको प्रतिफल देओस् । र जुन मानिसहरूले असल कर्म गरे, उनीहरूलाई राम्रो प्रतिफल प्रदान गरोस् ।

الَّذِينَ يَجْتَنِبُونَ كَبٰٓئِرَ الْإِثْمِ وَالْفَوَاحِشَ إِلَّا اللَّمَمَ ؕ إِنَّ رَبَّكَ وَاسِعُ الْمَغْفِرَةِ ؕ هُوَ أَعْلَمُ بِكُمْ إِذْ أَنْشَأَكُمْ مِّنَ الْأَرْضِ وَإِذْ أَنْتُمْ أَجِنَّةٌ فِي بُطُونِ أُمَّهٰتِكُمْ ۚ فَلَا تُزَكُّوا أَنْفُسَكُمْ ؕ هُوَ أَعْلَمُ بِمَنِ اتَّقٰى ﴿٣٢﴾

३२) जुन मानिसहरू ठूला-ठूला पाप र अश्लील कर्महरूबाट पन्छिन्छन्, केही साना-तिना पाप बाहेक । निश्चय नै तिम्रो पालनकर्ता क्षमाशीलतामा बडो व्यापक छ । उसले तिमीलाई राम्ररी जान्दछ, जब उसले तिमीलाई माटोबाट सृष्टि गऱ्यो र जब तिमी आफ्ना आमाहरूको पेटमा भ्रुण अवस्थामा थियौ । तसर्थ आफ्नो मनको पवित्रताको दावी आफै नगर । उसले संयमीहरूलाई राम्ररी जान्दछ ।

३३) के तपाईले त्यस व्यक्तिलाई देखनु भयो जो विमुख भयो,

أَفَرَءَيْتَ الَّذِي تَوَلَّىٰ ﴿٣٣﴾

३४) र अलिकति दियो, र कठोर भइहाल्यो (हात रोक्यो) ।

وَأَعْطَىٰ قَلِيلًا وَأَكْدَىٰ ﴿٣٤﴾

३५) के उसलाई परोक्षको ज्ञान छ कि उसले सबथोक देखिराखेको छ ?

أَعِندَهُۥ عِلْمُ الْغَيْبِ فَهُوَ يَرَىٰ ﴿٣٥﴾

३६) वा जुन कुरो ''मूसा(अ.)का'' किताबमा छन्, उनीहरूलाई त्यसको बारेमा थाहा भएन ?

أَمْ لَمْ يُنَبَّأْ بِمَا فِي صُحُفِ مُوسَىٰ ﴿٣٦﴾

३७) र जुन वफादार इब्राहीमका किताबमा थियो ?

وَإِبْرَٰهِيمَ الَّذِي وَفَّىٰ ﴿٣٧﴾

३८) कि कुनै पनि व्यक्तिले अरु व्यक्ति (को पाप) को भारी बोक्ने छैन ।

أَلَّا تَزِرُ وَازِرَةٌ وِزْرَ أُخْرَىٰ ﴿٣٨﴾

३९) र यो कि प्रत्येक मानिसकोलागी त्यही नै हो जसको निम्ति उसले प्रयास गऱ्यो ।

وَأَن لَّيْسَ لِلْإِنسَٰنِ إِلَّا مَا سَعَىٰ ﴿٣٩﴾

४०) र यो कि उसको प्रयास शीघ्र नै देखिनेछ,

وَأَنَّ سَعْيَهُۥ سَوْفَ يُرَىٰ ﴿٤٠﴾

४१) अनि उसलाई पूरा प्रतिफल प्रदान गरिनेछ ।

ثُمَّ يُجْزَىٰهُ الْجَزَآءَ الْأَوْفَىٰ ﴿٤١﴾

४२) र यो कि तपाईको पालनकर्ता कै पासमा पुग्नु छ ।

وَأَنَّ إِلَىٰ رَبِّكَ الْمُنتَهَىٰ ﴿٤٢﴾

४३) र यो कि उसैले हसाउँछ र रुलाउँछ ।

وَأَنَّهُۥ هُوَ أَضْحَكَ وَأَبْكَىٰ ﴿٤٣﴾

४४) र यो कि उसैले मार्दछ र जीवित राख्दछ ।

وَأَنَّهُۥ هُوَ أَمَاتَ وَأَحْيَا ﴿٤٤﴾

४५) र यो कि उसैले स्त्री र पुरुष (भाले र पोथी) जोडीको सृष्टि गऱ्यो ।

وَأَنَّهُۥ خَلَقَ ٱلزَّوْجَيْنِ ٱلذَّكَرَ وَٱلْأُنثَىٰ ﴿٤٥﴾

४६) (वीर्यको) थोपाबाट जबकि त्यो गर्भमा टपकाइन्छ ।

مِن نُّطْفَةٍ إِذَا تُمْنَىٰ ﴿٤٦﴾

४७) र यो कि (कयामतको दिन) उसैको जिम्मा पुनः उठाउनु छ ।

وَأَنَّ عَلَيْهِ ٱلنَّشْأَةَ ٱلْأُخْرَىٰ ﴿٤٧﴾

४८) र यो कि उही हो जसले कि धनी र सन्तुष्ट बनाउँछ ।

وَأَنَّهُۥ هُوَ أَغْنَىٰ وَأَقْنَىٰ ﴿٤٨﴾

४९) र यो कि उही शेअ्रा (अरबहरूका पहिलाको पुज्य तारा)को स्वामी हो ।

وَأَنَّهُۥ هُوَ رَبُّ ٱلشِّعْرَىٰ ﴿٤٩﴾

५०) र यो कि उसैले प्राचीन आदलाई नष्ट गऱ्यो ।

وَأَنَّهُۥٓ أَهْلَكَ عَادًا ٱلْأُولَىٰ ﴿٥٠﴾

५१) र समूदलाई पनि, अर्थात कसैलाई बाँकी छाडेन ।

وَثَمُودَا۟ فَمَآ أَبْقَىٰ ﴿٥١﴾

५२) र यिनीभन्दा पहिला ''नूहको'' कौमलाई पनि । कुनै सन्देह छैन कि उनीहरू बडो अत्याचारी र बडो अट्टेरी थिए ।

وَقَوْمَ نُوحٍ مِّن قَبْلُ ۖ إِنَّهُمْ كَانُوا۟ هُمْ أَظْلَمَ وَأَطْغَىٰ ﴿٥٢﴾

५३) र पल्टि जाने बस्तीलाई उसैले नष्ट गरिदियो ।

وَٱلْمُؤْتَفِكَةَ أَهْوَىٰ ﴿٥٣﴾

५४) अनि त्यसलाई छोपिहाल्यो, जसलाई जुन कुराले छोप्नु थियो ।

فَغَشَّىٰهَا مَا غَشَّىٰ ﴿٥٤﴾

५५) अनि (हे मानिस) तिमीले आफ्नो पालनकर्ताका कुन-कुन अनुकम्पाको विषयमा विवाद गर्ने छौ ?

فَبِأَىِّ ءَالَآءِ رَبِّكَ تَتَمَارَىٰ ﴿٥٥﴾

هٰذَا نَذِيْرٌ مِّنَ النُّذُرِ الْاُوْلٰى ﴿٥٦﴾

५६) यी (मोहम्मद स.) पनि पहिलेका सावधानकर्ताहरू जस्तै एउटा सावधान गर्नेवाला हुन् ।

اَزِفَتِ الْاٰزِفَةُ ﴿٥٧﴾

५७) आउनेवाला (कयामत) नजिक आइपुग्यो ।

لَيْسَ لَهَا مِنْ دُوْنِ اللّٰهِ كَاشِفَةٌ ﴿٥٨﴾

५८) त्यस दिनको लुकेका कुरालाई अल्लाह बाहेक कसैले प्रकट गर्न सक्ने छैन ।

اَفَمِنْ هٰذَا الْحَدِيْثِ تَعْجَبُوْنَ ﴿٥٩﴾

५९) अब के तिमीले यस कुरामा आश्चार्य गर्दछौ ?

وَتَضْحَكُوْنَ وَلَا تَبْكُوْنَ ﴿٦٠﴾

६०) र हाँस्दछौ? र रुँदैनौ?

وَاَنْتُمْ سٰمِدُوْنَ ﴿٦١﴾

६१) अपितु तिमी खेलीराखेका छौ ।

فَاسْجُدُوْا لِلّٰهِ وَاعْبُدُوْا ﴿٦٢﴾

६२) तसर्थ अल्लाहको अगाड़ि ढोग र उसैको उपासना गर ।



## सूरतुल् क़मर-५४




सूरतुल् क़मर मक्की हो, यसमा ५५ आयतहरू र ३ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اِقْتَرَبَتِ السَّاعَةُ وَانْشَقَّ الْقَمَرُ ﴿١﴾

१) कयामत नजिक आइपुग्यो र चन्द्र च्यातीयो ।

وَاِنْ يَّرَوْا اٰيَةً يُّعْرِضُوْا وَيَقُوْلُوْا سِحْرٌ مُّسْتَمِرٌّ ﴿٢﴾

२) र यदि काफिरहरूले कुनै चमत्कार देख्दछन् भने मुख फर्काइहाल्छन् र भन्छन् कि यो पहिलादेखि चलिआइरहेको एउटा जादू हो ।

وَكَذَّبُوْا وَاتَّبَعُوْٓا اَهْوَآءَهُمْ وَكُلُّ اَمْرٍ مُّسْتَقِرٌّ ﴿٣﴾

३) उनीहरूले असत्य ठहराए, र आफ्ना इच्छाहरू अनुसार गरे । र प्रत्येक कामको समय निर्धारित छ ।

وَلَقَدْ جَآءَهُمْ مِّنَ الْاَنْۢبَآءِ مَا فِيْهِ مُزْدَجَرٌ ﴿٤﴾

४) र निश्चित रूपले उनीहरू छेउ (अतीतका) यस्ता सूचनाहरू पुगिसकेका छन्, जसमा हप्की दप्की र नसीहतको कुरा छ ।

حِكْمَةٌۢ بَالِغَةٌ فَمَا تُغْنِ النُّذُرُ ﴿٥﴾

५) अतः पूर्ण बुद्धिमताको कुरा पनि छ, किन्तु चेतावनीहरू उनीहरूको कुनै काम आइरहेको छैन ।

فَتَوَلَّ عَنْهُمْ يَوْمَ يَدْعُ الدَّاعِ اِلٰى شَيْءٍ نُّكُرٍ ﴿٦﴾

६) अतः हे नबी(स.) तपाई उनीहरूबाट विमुख भइहाल्नुस्, जुन दिन पुकार्नेवाला एक अत्यन्त अप्रिय कुरातिर बोलाउने छ ।

خُشَّعًا اَبْصَارُهُمْ يَخْرُجُوْنَ مِنَ الْاَجْدَاثِ كَاَنَّهُمْ جَرَادٌ مُّنْتَشِرٌ ﴿٧﴾

७) तब उनीहरू झुकेका आफ्ना आँखाहरूका साथ, चिहानबाट यसरी

निस्किरहेका हुन्छन्, जस्तो उनीहरू छरिएका सलहहरू हुन् ।

مُّهْطِعِينَ إِلَى الدَّاعِ ۖ يَقُولُ الْكَافِرُونَ هَٰذَا يَوْمٌ عَسِرٌ ﴿٨﴾

८) त्यस बोलाउनेवालातिर दगुर्दै गइराखेका हुनेछन् । इन्कार गर्नेहरू भन्ने छन् कि यो दिन बडो कठिन छ ।

كَذَّبَتْ قَبْلَهُمْ قَوْمُ نُوحٍ فَكَذَّبُوا عَبْدَنَا وَقَالُوا مَجْنُونٌ وَازْدُجِرَ ﴿٩﴾

९) यिनीहरूभन्दा पहिला ''नूहको'' जाति बन्धुले पनि हाम्रो भक्तलाई असत्य ठहराएका थिए । र बौलाहा भनेर हप्काएका थिए ।

فَدَعَا رَبَّهُ أَنِّي مَغْلُوبٌ فَانتَصِرْ ﴿١٠﴾

१०) तब उनले आफ्नो पालनकर्तासँग प्रार्थना गरे कि म विवश छु, तसर्थ मेरो मद्दत गर ।

فَفَتَحْنَا أَبْوَابَ السَّمَاءِ بِمَاءٍ مُّنْهَمِرٍ ﴿١١﴾

११) तब हामीले मुसलधारे पानीको वर्षाबाट आकाशको मुहान खोली दियौं ।

وَفَجَّرْنَا الْأَرْضَ عُيُونًا فَالْتَقَى الْمَاءُ عَلَىٰ أَمْرٍ قَدْ قُدِرَ ﴿١٢﴾

१२) र धरतीमा पानीका मूलहरू प्रवाहित गरिदियौं र सारा पानी त्यस कामको निम्ति एकत्रित भइहाल्यो जुन निर्धारित भैसकेको थियो ।

وَحَمَلْنَاهُ عَلَىٰ ذَاتِ أَلْوَاحٍ وَدُسُرٍ ﴿١٣﴾

१३) र हामीले ''नूह(अ)लाई'' एउटा डुङ्गामा जो तख्ता र किल्लाहरूबाट तयार गरिएको थियो, सवार गराई हाल्यौं ।

تَجْرِي بِأَعْيُنِنَا جَزَاءً لِّمَن كَانَ كُفِرَ ﴿١٤﴾

१४) त्यो हाम्रो आँखाको अगाडि चलिरहेको थियो, यो बदला उसको तर्फबाट थियो, जसलाई इन्कार गरिएको थियो ।

وَلَقَدْ تَّرَكْنٰهَآ اٰيَةً فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٥﴾

१५) र हामीले यस घटनालाई एउटा निशानी बनाएर बाँकी राख्यौं, त कोही छ जसले उपदेश हासिल गरोस् ।

فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿١٦﴾

१६) भन मेरो सजाय र डराउने कुरा कस्तो रह्यो ?

وَلَقَدْ يَسَّرْنَا الْقُرْاٰنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿١٧﴾

१७) र हामीले कुरआनलाई बुझ्नको निम्ति सरल गरिदियौं, त कोही छ जसले उपदेश हासिल गरोस् ?

كَذَّبَتْ عَادٌ فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿١٨﴾

१८) "आदको समुदायले" पनि झूठा ठहराए तर मेरो यातना र मेरो डरको कुरा कस्तो रह्यो ?

اِنَّآ اَرْسَلْنَا عَلَيْهِمْ رِيْحًا صَرْصَرًا فِيْ يَوْمِ نَحْسٍ مُّسْتَمِرٍّ ﴿١٩﴾

१९) हामीले उनीहरूतिर एउटा अशुभ दिनमा निरन्तर तेज बग्ने प्रचण्ड आँधी चलायौं ।

تَنْزِعُ النَّاسَ كَاَنَّهُمْ اَعْجَازُ نَخْلٍ مُّنْقَعِرٍ ﴿٢٠﴾

२०) त्यसले मानिसहरूलाई उखेलिएको खजूरको बोट जस्तै उठाउँदै फ्याँक्दै गरेको थियो ।

فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿٢١﴾

२१) त मेरो यातना र तर्साइ कस्तो रह्यो ?

وَلَقَدْ يَسَّرْنَا الْقُرْاٰنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُّدَّكِرٍ ﴿٢٢﴾

२२) निश्चित रूपले हामीले कुरआनलाई उपदेशको लागि सजिलो पारिदिएका छौं, त कोही छ जसले उपदेश लिइहालोस् ?

كَذَّبَتْ ثَمُوْدُ بِالنُّذُرِ ﴿٢٣﴾

२३) "समूदको समुदायले" पनि चेतावनी दिनेवालाहरूलाई असत्य ठहराए ।

فَقَالُوْٓا اَبَشَرًا مِّنَّا وَاحِدًا نَّتَّبِعُهٗٓ اِنَّآ اِذًا لَّفِيْ ضَلٰلٍ وَّسُعُرٍ ﴿٢٤﴾

२४) र भने कि के हामीले हामीहरूमध्ये कै एउटा मान्छेको अनुशरण गरौं ?

त्यस्तो भएत हामी निश्चित रूपले मार्ग विचलन र बौलाहापनमा परिहाल्ने छौं ।

२५) के हामी सबैमध्ये उसै माथि वह्य (अल्लाहको वाणी) अवतरित भएको हो ? होइन बरु त्यो अत्यन्त झूठा, आत्म प्रशंसक हो ।

ءَاُلْقِىَ الذِّكْرُ عَلَيْهِ مِنْۢ بَيْنِنَا بَلْ هُوَ كَذَّابٌ اَشِرٌ ﴿٢٥﴾

२६) उनी सबैलाई अब चाडै थाहा भैहाल्ने छ कि को झूठा र आत्मप्रशंसक थियो ।

سَيَعْلَمُوْنَ غَدًا مَّنِ الْكَذَّابُ الْاَشِرُ ﴿٢٦﴾

२७) निःसन्देह हामीले उनको परीक्षाको निम्ति उँटनी पठाउने छौं, तसर्थ (हे सालेह) तिमी उनको प्रतिक्षा र धैर्य गर ।

اِنَّا مُرْسِلُوا النَّاقَةِ فِتْنَةً لَّهُمْ فَارْتَقِبْهُمْ وَاصْطَبِرْ ﴿٢٧﴾

२८) हो उनीहरूलाई सूचित गरिदेऊ कि पानी उनीहरूका बीच बाँडी सकिएको छ। प्रत्येक व्यक्ति आफ्नो पालोमा आउनु पर्नेछ ।

وَنَبِّئْهُمْ اَنَّ الْمَآءَ قِسْمَةٌ ۢ بَيْنَهُمْ ۚ كُلُّ شِرْبٍ مُّحْتَضَرٌ ﴿٢٨﴾

२९) उनीहरूले आफ्नो साथीलाई डाँके, जसले (उँटनीमाथि) प्रहार गऱ्यो र उसको घुँडाको पछाडिको नसा काटिदियो ।

فَنَادَوْا صَاحِبَهُمْ فَتَعَاطٰى فَعَقَرَ ﴿٢٩﴾

३०) तसर्थ मेरो यातना र तर्साइ कस्तो रह्यो?

فَكَيْفَ كَانَ عَذَابِيْ وَنُذُرِ ﴿٣٠﴾

३१) हामी उनीहरूमाथि एउटा चित्कार (विष्फोट) पठायौं, अनि उनीहरू यस्तो भैहाले जस्तो खेतीको आली बनाउँदा मडारिएको घाँसहरू ।

اِنَّآ اَرْسَلْنَا عَلَيْهِمْ صَيْحَةً وَّاحِدَةً فَكَانُوْا كَهَشِيْمِ الْمُحْتَظِرِ ﴿٣١﴾

३२) र हामीले कुरआनलाई उपदेशको निम्ति सरल गरिदियौं, त कोही छ जसले उपदेश लिइहालोस् ?

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِنْ مُدَّكِرٍ ﴿٣٢﴾

३३) "लूत(अ.)को" क़ौम (जातिबन्धु) ले पनि डराउनेहरूलाई झूठा भने ।

كَذَّبَتْ قَوْمُ لُوطٍ بِالنُّذُرِ ﴿٣٣﴾

३४) तब हामीले उनीहरूमाथि गिट्टीले भरिएको हावा चलायौं, तर "लूत(अ.)का" परिवार बाहेक तिनीहरूलाई हामीले प्रातःकाल नै बचाइहाल्यौं ।

إِنَّا أَرْسَلْنَا عَلَيْهِمْ حَاصِبًا إِلَّا آلَ لُوطٍ ۖ نَجَّيْنَاهُمْ بِسَحَرٍ ﴿٣٤﴾

३५) हामी यस्तै प्रकारले त्यस व्यक्तिलाई आफ्नो अनुकम्पाबाट प्रतिफल दिन्छौं जसले कृतज्ञता देखाउँछ ।

نِعْمَةً مِنْ عِنْدِنَا ۚ كَذَٰلِكَ نَجْزِي مَنْ شَكَرَ ﴿٣٥﴾

३६) र (लूत (अ.)ले) उनीहरूलाई हाम्रो पकडबाट डराएका पनि थिए तर तिनीहरूले त्यसमा शंका गर्दैरहे ।

وَلَقَدْ أَنْذَرَهُمْ بَطْشَتَنَا فَتَمَارَوْا بِالنُّذُرِ ﴿٣٦﴾

३७) उनीहरूले लूत(अ.)लाई फकाएर उसको पासबाट उसको अतिथिहरूलाई बोलाउन चाहे, तब हामीले उनको आँखालाई अन्धा बनाई दियौं, तसर्थ (अब) मेरो यातना र मेरो डरको स्वाद चाख ।

وَلَقَدْ رَاوَدُوهُ عَنْ ضَيْفِهِ فَطَمَسْنَا أَعْيُنَهُمْ فَذُوقُوا عَذَابِي وَنُذُرِ ﴿٣٧﴾

३८) र सत्य कुरो छ उनीलाई बिहानै एउटा अटल निर्धारित यातनाले नष्ट गरिदियो ।

وَلَقَدْ صَبَّحَهُمْ بُكْرَةً عَذَابٌ مُسْتَقِرٌّ ﴿٣٨﴾

३९) त अब मेरो सजाय र मेरो डरको स्वाद चाख ।

فَذُوقُوا عَذَابِي وَنُذُرِ ﴿٣٩﴾

وَلَقَدْ يَسَّرْنَا الْقُرْآنَ لِلذِّكْرِ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٤٠﴾

४०) र हामीले कुरआनलाई उपदेशको निम्ति सरल बनाइदिएका छौं त कोही छ जसले शिक्षा प्राप्त गरोस् ।

وَلَقَدْ جَاءَ آلَ فِرْعَوْنَ النُّذُرُ ﴿٤١﴾

४१) र फिरऔनका मानिसहरूको पास पनि डराउने वाला आए,

كَذَّبُوا بِآيَاتِنَا كُلِّهَا فَأَخَذْنَاهُمْ أَخْذَ عَزِيزٍ مُّقْتَدِرٍ ﴿٤٢﴾

४२) उनीहरूले हाम्रा सबै निशानीहरूलाई असत्य ठहराए । अन्ततः हामीले उनीहरूलाई समातिहाल्यौं, जुन प्रकारले एउटा जबरजस्त अधिपत्यशालीले समात्छ ।

أَكُفَّارُكُمْ خَيْرٌ مِّنْ أُولَٰئِكُمْ أَمْ لَكُم بَرَاءَةٌ فِي الزُّبُرِ ﴿٤٣﴾

४३) (हे कुरैशीहरू) के तिम्रा काफिरहरू ती काफिरहरूभन्दा राम्रा छन् ? वा पहिलाका ग्रन्थहरूमा (तिम्रो निम्ति कुनै) छुट्कारा लेखिएको छ ?

أَمْ يَقُولُونَ نَحْنُ جَمِيعٌ مُّنتَصِرٌ ﴿٤٤﴾

४४) के यिनीहरू भन्छन्: कि हाम्रो जत्था विजय हुनेवाला बडो बलियो छ ?

سَيُهْزَمُ الْجَمْعُ وَيُوَلُّونَ الدُّبُرَ ﴿٤٥﴾

४५) शीघ्र नै यो जत्था पराजित हुने छ र यिनीहरू पिठ्यू फर्काई भागिहाल्नेछन् ।

بَلِ السَّاعَةُ مَوْعِدُهُمْ وَالسَّاعَةُ أَدْهَىٰ وَأَمَرُّ ﴿٤٦﴾

४६) उनीहरूसंगको वचन अनुसार कयामतको समय (आउने) छ र कयामत बडो गाह्रो र बहुत कठोर कुरा हो ।

إِنَّ الْمُجْرِمِينَ فِي ضَلَالٍ وَسُعُرٍ ﴿٤٧﴾

४७) निःसन्देह पापीहरू मार्गबिचलन र यातनामा परेका छन् ।

يَوْمَ يُسْحَبُونَ فِي النَّارِ عَلَىٰ وُجُوهِهِمْ ذُوقُوا مَسَّ سَقَرَ ﴿٤٨﴾

४८) जुनदिन उनीहरूलाई मुख तल पारेर नर्कको आगोमा घिसारिनेछ । (र उनीहरूसंग भनिनेछ) अब, आगोको स्वाद चाख ।

إِنَّا كُلَّ شَيْءٍ خَلَقْنَٰهُ بِقَدَرٍ ﴿٤٩﴾

४९) निश्चय नै हामीले हरेक कुरालाई निर्धारित नाप र अनुमानमा सृष्टि गरेका छौं ।

وَمَآ أَمْرُنَآ إِلَّا وَٰحِدَةٌ كَلَمْحٍۭ بِٱلْبَصَرِ ﴿٥٠﴾

५०) र हाम्रो आदेश एक पटक मात्र (एकछिनको लागि हुन्छ) जस्तो कि आँखाको झिम्काई ।

وَلَقَدْ أَهْلَكْنَآ أَشْيَاعَكُمْ فَهَلْ مِن مُّدَّكِرٍ ﴿٥١﴾

५१) र हामीले तिमी जस्ता मानिसलाई विनष्ट गरिसकेका छौं, त कोही छ जो उपदेश प्राप्त गरिहालोस् ।

وَكُلُّ شَيْءٍ فَعَلُوهُ فِى ٱلزُّبُرِ ﴿٥٢﴾

५२) र जे-जति उनीहरूले गरेका छन्, त्यो कर्मपत्रमा अंकित छ ।

وَكُلُّ صَغِيرٍ وَكَبِيرٍ مُّسْتَطَرٌ ﴿٥٣﴾

५३) (अर्थात्) प्रत्येक सानो र ठूलो कुरा लेखिएको छ ।

إِنَّ ٱلْمُتَّقِينَ فِى جَنَّٰتٍ وَنَهَرٍ ﴿٥٤﴾

५४) निश्चय नै जो संयमी परहेजगार छन्, उनीहरू बाग र नहरहरूको माझमा हुनेछन् ।

فِى مَقْعَدِ صِدْقٍ عِندَ مَلِيكٍ مُّقْتَدِرٍۭ ﴿٥٥﴾

५५) (अर्थात्) पवित्र स्थानमा अधिपत्यशाली सम्राटको निकट राम्रो सँग सम्मानका साथ ।



## सूरतुर्रहमान-५५




सूरतुर्रहमान मदनी हो, यसमा ७८ आयतहरू र ३ रुकूअ्हरू छन् ।

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

اَلرَّحۡمٰنُ ۙ﴿١﴾

१) रहमान (अल्लाह) ले,

عَلَّمَ الۡقُرۡاٰنَ ؕ﴿٢﴾

२) कुरआन सिकायो,

خَلَقَ الۡاِنۡسَانَ ۙ﴿٣﴾

३) उसैले मानिसहरूलाई सृष्टि गऱ्यो,

عَلَّمَهُ الۡبَيَانَ ﴿٤﴾

४) र उसलाई बोल्न सिकायो,

اَلشَّمۡسُ وَالۡقَمَرُ بِحُسۡبَانٍ ۙ﴿٥﴾

५) सूर्य र चन्द्र एक निर्धारित हिसाबले चलिराखेका छन्,

وَّالنَّجۡمُ وَالشَّجَرُ يَسۡجُدٰنِ ﴿٦﴾

६) र तारा र वृक्ष दुबैले ढोगी राखेका छन् ।

وَالسَّمَآءَ رَفَعَهَا وَوَضَعَ الۡمِيۡزَانَ ۙ﴿٧﴾

७) र उसैले आकाशलाई माथि उठायो र तुला (तराजु) स्थापित गऱ्यो ।

اَلَّا تَطۡغَوۡا فِى الۡمِيۡزَانِ ﴿٨﴾

८) ताकि तिमी तौल्दा सीमाको उल्लंघन (घटीबढी) नगर ।

وَاَقِيۡمُوا الۡوَزۡنَ بِالۡقِسۡطِ وَلَا تُخۡسِرُوا الۡمِيۡزَانَ ﴿٩﴾

९) न्यायोचित रूपले ठीक तौल गर र तौलमा कम नदेऊ ।

وَالۡاَرۡضَ وَضَعَهَا لِلۡاَنَامِ ۙ﴿١٠﴾

१०) र उसैले प्राणीहरूको निम्ती धरती बिछ्याई दियो ।

فِيۡهَا فَاكِهَةٌ ۙ وَّالنَّخۡلُ ذَاتُ الۡاَكۡمَامِ ۖ﴿١١﴾

११) त्यसमा स्वादिष्ट फल र गुच्छावाला खजूरका रुखहरू छन् ।

وَالۡحَبُّ ذُو الۡعَصۡفِ وَالرَّيۡحَانُ ۚ﴿١٢﴾

१२) र भुसवाला अन्नका दाना छन् र सुगन्धित फलहरू पनि छन् ।

१३) तसर्थ (हे मानिस र जिन्न) तिमीले आफ्नो पालनकर्ताको कुन-कनु अनुकम्पालाई असत्य ठहराउँनेछौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٣﴾

१४) उसले मनुष्यलाई कङक्रिट जस्ता खनखनाउँदो माटोबाट सृष्टि गऱ्यो ।

خَلَقَ الْإِنسَانَ مِن صَلْصَالٍ كَالْفَخَّارِ ﴿١٤﴾

१५) र जिन्नलाई उसले आगोको रापबाट सृष्टि गऱ्यो ।

وَخَلَقَ الْجَانَّ مِن مَّارِجٍ مِّن نَّارٍ ﴿١٥﴾

१६) तसर्थ तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य साबित गर्नेछौ ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٦﴾

१७) ऊ दुई पूर्वको स्वामी हो र दुई पश्चिमको पनि ।

رَبُّ الْمَشْرِقَيْنِ وَرَبُّ الْمَغْرِبَيْنِ ﴿١٧﴾

१८) अनि (हे जिन्न र मानव) तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पाहरूलाई असत्य ठहाराउनेछौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿١٨﴾

१९) उसैले दुई समुन्द्र प्रवाहित गरिदियो जो आपसमा मिल्छन् ।

مَرَجَ الْبَحْرَيْنِ يَلْتَقِيَانِ ﴿١٩﴾

२०) ती दुवैको बीचमा एउटा पर्दा छ । जसको तिनीहरू अतिक्रमण गर्दैनन् ।

بَيْنَهُمَا بَرْزَخٌ لَّا يَبْغِيَانِ ﴿٢٠﴾

२१) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢١﴾

२२) ती दुवै समुन्द्रबाट मोती र मुँगा निस्कन्छ,

يَخْرُجُ مِنْهُمَا اللُّؤْلُؤُ وَالْمَرْجَانُ ﴿٢٢﴾

२३) अतः तिमीले आफ्नो पालनकर्ताका कुन-कुन पुरस्कारहरू झूठ भन्नेछौं ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٣﴾

| | |
|---|---|
| २४) र ती जहाजहरू पनि उसैका हुन् जो समुन्द्रमा पर्वतहरू झै अग्लो भई चलीराखेका छन्, | وَلَهُ الْجَوَارِ الْمُنْشَآتُ فِي الْبَحْرِ كَالْأَعْلَامِ ﴿٢٤﴾ |
| २५) तसर्थ तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٥﴾ |
| २६) प्रत्येक प्राणी जो यस धरतीमा छ, नाशवान छ । | كُلُّ مَنْ عَلَيْهَا فَانٍ ﴿٢٦﴾ |
| २७) तर तिम्रो पालनकर्ताको अनुहार (व्यक्तित्व) जो प्रतिष्ठित र सम्मानित छ शेष रहनेवाला छ, | وَيَبْقَىٰ وَجْهُ رَبِّكَ ذُو الْجَلَالِ وَالْإِكْرَامِ ﴿٢٧﴾ |
| २८) त तिमीले आफ्नो पालनकर्ताको कुन- कुन अनुकम्पालाई असत्य ठहराउने छौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٢٨﴾ |
| २९) आकाशहरू र धरतीमा जो कोही पनि छन् सबै उसैसित माँगदछन्, प्रत्येक दिन ऊ नौलो शानमा छ । | يَسْأَلُهُ مَنْ فِي السَّمَاوَاتِ وَالْأَرْضِ ۚ كُلَّ يَوْمٍ هُوَ فِي شَأْنٍ ﴿٢٩﴾ |
| ३०) अनि तिमीले आफ्ना पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٠﴾ |
| ३१) हे दुवै समुदायहरू (जिन्न र मनुष्य) हामी शीघ्र तिम्रा निम्ति पूर्ण रूपले ध्यान दिनेछौं । | سَنَفْرُغُ لَكُمْ أَيُّهَ الثَّقَلَانِ ﴿٣١﴾ |
| ३२) अनि तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ? | فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٣٢﴾ |
| ३३) हे जिन्न र मनुष्यका समुदायहरू | يَا مَعْشَرَ الْجِنِّ وَالْإِنْسِ إِنِ اسْتَطَعْتُمْ أَنْ تَنْفُذُوا |

مِنْ أَقْطَارِ السَّمٰوٰتِ وَالْأَرْضِ فَانْفُذُوْا ۭ لَا تَنْفُذُوْنَ إِلَّا بِسُلْطٰنٍ ﴿٣٣﴾

यदि तिमीहरूमा आकाशहरू र धरतीका सीमाहरूलाई पार गर्ने शक्ति छ त निस्केर हेर तर विना वर्चस्वता र शक्तिको तिमीले कहिल्यै पार गर्न सक्दैनौं ।

فَبِأَيِّ آلَاۗءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٣٤﴾

३४) अनि तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

يُرْسَلُ عَلَيْكُمَا شُوَاظٌ مِّنْ نَّارٍ ەۙ وَّنُحَاسٌ فَلَا تَنْتَصِرٰنِ ﴿٣٥﴾

३५) तिमीमाथि आगोको ज्वाला र धुवाँ छोडिने छ, अनि तिमीले मुकाबिला गर्न सक्दैनौ ।

فَبِأَيِّ آلَاۗءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٣٦﴾

३६) अनि तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पलाई असत्य ठहराउने छौ ?

فَإِذَا انْشَقَّتِ السَّمَاۗءُ فَكَانَتْ وَرْدَةً كَالدِّهَانِ ﴿٣٧﴾

३७) अनि जब आकाश च्यातिएर रातो छाला जस्तो भइहाल्नेछ,

فَبِأَيِّ آلَاۗءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٣٨﴾

३८) अनि तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

فَيَوْمَئِذٍ لَّا يُسْـَٔلُ عَنْ ذَنْۢبِهٖٓ إِنْسٌ وَّلَا جَاۗنٌّ ﴿٣٩﴾

३९) अनि त्यसदिन न कुनै मानिससित उसको पापको बारेमा सोधिने छ र न कुनै जिन्नसित ।

فَبِأَيِّ آلَاۗءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٤٠﴾

४०) अनि तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

يُعْرَفُ الْمُجْرِمُوْنَ بِسِيْمٰهُمْ فَيُؤْخَذُ بِالنَّوَاصِيْ وَالْأَقْدَامِ ﴿٤١﴾

४१) गुनहगारहरू आफ्ना अनुहारबाट नै चिनिने छन्, र उनका टाउकोको

कपालहरू र खुट्टाद्वारा उनीहरूलाई समातिने छ ।

४२) अतः तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

فَبِاَيِّ اٰلَاۤءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٤٢﴾

४३) यही त्यो जहन्नम हो, जसलाई गुनाहगारहरूले असत्य भन्दथे ।

هٰذِهٖ جَهَنَّمُ الَّتِیْ یُكَذِّبُ بِهَا الْمُجْرِمُوْنَ ﴿٤٣﴾

४४) उनीहरू यसको र उम्लिराखकेको तातो पानीको बीचमा चक्कर लगाइरहनेछन् ।

یَطُوْفُوْنَ بَیْنَهَا وَبَیْنَ حَمِیْمٍ اٰنٍ ﴿٤٤﴾

४५) तसर्थ तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउनेछौ ।

فَبِاَيِّ اٰلَاۤءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٤٥﴾

४६) र जुन मानिस आफ्नो पालनकर्ताको सामु उभिनुबाट डर मान्यो, उसको निम्ति दुईवटा स्वर्गहरू छन्,

وَلِمَنْ خَافَ مَقَامَ رَبِّهٖ جَنَّتٰنِ ﴿٤٦﴾

४७) त तिमीले आफ्नो पालनकर्ताको कुन- कुन अनुकम्पालाई असत्य ठहराउनेछौ ?

فَبِاَيِّ اٰلَاۤءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٤٧﴾

४८) ती दुवै स्वर्गहरूमा धेरै हाँगाहरू हुने छन् ।

ذَوَاتَاۤ اَفْنَانٍ ﴿٤٨﴾

४९) त तिमीले आफ्नो पालनकर्ताको कुन- कुन अनुकम्पालाई असत्य ठहराउनेछौ ?

فَبِاَيِّ اٰلَاۤءِ رَبِّكُمَا تُكَذِّبٰنِ ﴿٤٩﴾

५०) यी दुवै बगैंचाहरूमा दुईटा प्रवाहित झरनाहरू छन्,

فِیْهِمَا عَیْنٰنِ تَجْرِیٰنِ ﴿٥٠﴾

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥١﴾

५१) त तिमीले आफ्नो पालनकर्ताको कुन- कुन अनुकम्पालाई असत्य ठहराउनेछौ ?

فِيهِمَا مِن كُلِّ فَاكِهَةٍ زَوْجَانِ ﴿٥٢﴾

५२) ती दुवै बगैंचाहरूमा प्रत्येक स्वादिष्ट फलका दुई-दुई किसिम हुने छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٣﴾

५३) अतः तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

مُتَّكِئِينَ عَلَىٰ فُرُشٍ بَطَائِنُهَا مِنْ إِسْتَبْرَقٍ ۚ وَجَنَى الْجَنَّتَيْنِ دَانٍ ﴿٥٤﴾

५४) स्वर्गमा रहनेहरू यस्ता ओछ्यानमा तकिया लगाएर बसेका हुनेछन्, जसको अस्तर बाक्लो रेशमका हुनेछन्, र दुवै बगैंचाका फलहरू नजिकै हुनेछन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٥﴾

५५) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पलाई असत्य ठहराउने छौ ?

فِيهِنَّ قَاصِرَاتُ الطَّرْفِ لَمْ يَطْمِثْهُنَّ إِنسٌ قَبْلَهُمْ وَلَا جَانٌّ ﴿٥٦﴾

५६) त्यहाँ आँखा झुकाएका लज्जालु स्त्रीहरू (अप्सरा) हुनेछिन्, जसलाई जन्नतवाला भन्दा पहिला न कुनै मानिसले स्पर्श गरेको हुन्छ र न कुनै जिन्नले,

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ﴿٥٧﴾

५७) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

كَأَنَّهُنَّ الْيَاقُوتُ وَالْمَرْجَانُ ﴿٥٨﴾

५८) ती (अप्सरा) स्त्रीहरू याकूत र मूँगा जस्ती हुने छिन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٥٩

५९) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

هَلْ جَزَاءُ الْإِحْسَانِ إِلَّا الْإِحْسَانُ ٦٠

६०) भलाईको बदला भलाई बाहेक अरु के हुनेछ ?

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٦١

६१) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पलाई असत्य ठहराउने छौ ?

وَمِنْ دُونِهِمَا جَنَّتَانِ ٦٢

६२) र यी बगैंचाहरू बाहेक दुईवटा अरु बगैंचाहरू छन्,

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٦٣

६३) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पलाई असत्य ठहराउने छौ ?

مُدْهَامَّتَانِ ٦٤

६४) दुवै निकै गाढा हरिया छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٦٥

६५) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पलाई असत्य ठहराउने छौ ?

فِيهِمَا عَيْنَانِ نَضَّاخَتَانِ ٦٦

६६) ती दुवै बगैंचाहरूमा दुईवटा बग्ने झरनाहरू प्रवाहित भइराखेका छन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٦٧

६७) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

فِيهِمَا فَاكِهَةٌ وَنَخْلٌ وَرُمَّانٌ ٦٨

६८) यिनीहरूमा स्वादिष्ट फल, मेवाहरू खजूर र अनारहरू हुनेछन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ ٦٩

६९) अतः तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

फِيهِنَّ خَيْرَٰتٌ حِسَانٌ

७०) यिनीहरूमा चरित्रवान र सुन्दर स्त्रीहरू छिन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

७१) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

حُورٌ مَّقْصُورَٰتٌ فِى ٱلْخِيَامِ

७२) गोरो रंग भएकी ती स्त्रीहरू स्वर्गका खीमाहरूमा रहनेवाली हुन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

७३) त तिमीले (हे मानव र जिन्न) आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

لَمْ يَطْمِثْهُنَّ إِنسٌ قَبْلَهُمْ وَلَا جَآنٌّ

७४) जसलाई पहिला न कुनै मनुष्यले छोएको हुन्छ र न कुनै जिन्नले,

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

७५) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

مُتَّكِـِٔينَ عَلَىٰ رَفْرَفٍ خُضْرٍ وَعَبْقَرِىٍّ حِسَانٍ

७६) उनीहरू हरिया रेशमी डसना र उत्कृष्ट र असाधारण गलैंचाहरूमा तकिया लगाएर बसेका हुनेछन् ।

فَبِأَيِّ آلَاءِ رَبِّكُمَا تُكَذِّبَانِ

७७) त तिमीले आफ्नो पालनकर्ताको कुन-कुन अनुकम्पालाई असत्य ठहराउने छौ ?

تَبَٰرَكَ ٱسْمُ رَبِّكَ ذِى ٱلْجَلَٰلِ وَٱلْإِكْرَامِ

७८) ठूलै बरकतवाला नाम हो तिम्रो गरिमामय र उदार पालनकर्ताको ।



# सूरतुल् वाकिअ़:-५६




सूरतुल् वाकिअ़: मक्की हो, यसमा ९६ आयतहरू र ३ रुकूअ्हरू छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِذَا وَقَعَتِ الْوَاقِعَةُ ١

१) जब कयामत घटित भइहाल्ने छ ।

لَيْسَ لِوَقْعَتِهَا كَاذِبَةٌ ٢

२) त्यसको घटित हुने कुरामा केही असत्य छैन ।

خَافِضَةٌ رَّافِعَةٌ ٣

३) कसैलाई तल झार्ने, कसैलाई माथि उचाल्ने हुनेछ ।

إِذَا رُجَّتِ الْأَرْضُ رَجًّا ٤

४) जब धरती भूकम्पका साथ कम्पित गराइनेछ ।

وَبُسَّتِ الْجِبَالُ بَسًّا ٥

५) र पहाडहरू फुटालेर साना-साना कणमा परिणत गराइनेछन् ।

فَكَانَتْ هَبَاءً مُّنبَثًّا ٦

६) अनि तिनीहरू धुलो जस्तो भई उड्न थाल्नेछन् ।

وَكُنتُمْ أَزْوَاجًا ثَلَاثَةً ٧

७) र तिमीहरू तीन समूहमा परिणत हुनेछौ ।

فَأَصْحَابُ الْمَيْمَنَةِ مَا أَصْحَابُ الْمَيْمَنَةِ ٨

८) त दाहिना हातवाला, दाहिना हातवाला कस्तो सौभाग्यशाली छन् ।

وَأَصْحَابُ الْمَشْأَمَةِ مَا أَصْحَابُ الْمَشْأَمَةِ ٩

९) र बाँया हातवाला अफशोच बाँया हातवालाको कस्तो हालत छ ।

وَالسَّابِقُونَ السَّابِقُونَ ١٠

१०) र जो अगाडि वाला छन् उनीहरू त अगाडिवाला नै हुन् ।

أُولَٰئِكَ الْمُقَرَّبُونَ ١١

११) तिनीहरू बिल्कुल (अल्लाहका) सामिप्यता प्राप्त हुन् ।

فِي جَنَّاتِ النَّعِيمِ ١٢

१२) अनुकम्पाले भरिएको जन्नतमा छन् ।

ثُلَّةٌ مِّنَ الْأَوَّلِينَ ١٣

१३) धेरै ठूलो समूह त अघिका मानिस-हरूको हुनेछ ।

وَقَلِيلٌ مِّنَ الْآخِرِينَ ١٤

१४) र थोरै पछिका मध्येबाट ।

عَلَىٰ سُرُرٍ مَّوْضُونَةٍ ١٥

१५) यिनीहरू सुनका तारहरूले बनेका पलंगहरू माथि,

مُّتَّكِئِينَ عَلَيْهَا مُتَقَابِلِينَ ١٦

१६) एक अर्काको सामुन्ने तकिया लगाएर बसेका हुने छन् ।

يَطُوفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُونَ ١٧

१७) उनको पासमा किशोरहरू जो सधैं (बालक नै रहनेछन् । आउंदै जांदै गर्नेछन्) ।

بِأَكْوَابٍ وَأَبَارِيقَ وَكَأْسٍ مِّن مَّعِينٍ ١٨

१८) अर्थात् प्याला र जगमा स्वादिलो पेयले भरिएको पात्र लिएर हिंडिरहने छन् ।

لَّا يُصَدَّعُونَ عَنْهَا وَلَا يُنزِفُونَ ١٩

१९) जसबाट न त टाउकोमा दर्द हुनेछ र न उनको बुद्धिमा विकार आउनेछ ।

وَفَاكِهَةٍ مِّمَّا يَتَخَيَّرُونَ ٢٠

२०) र त्यस्ता फलहरूको साथ जुन कि उनले रुचाउँछन् ।

وَلَحْمِ طَيْرٍ مِّمَّا يَشْتَهُونَ ٢١

२१) र पंक्षीका मासु जुन तिनीहरूले रुचाउँछन् ।

وَحُورٌ عِينٌ ٢٢

२२) र ठूला-ठूला आँखा भएकी (अप्सरा) हूरहरू,

كَأَمْثَالِ اللُّؤْلُؤِ الْمَكْنُونِ ٢٣

२३) जो लुकेको मोती जस्ती हुने छिन् ।

جَزَآءًۢ بِمَا كَانُوا۟ يَعْمَلُونَ ﴿٢٤﴾

२४) यो उनीहरूको कर्मको प्रतिफल हो ।

لَا يَسْمَعُونَ فِيهَا لَغْوًا وَلَا تَأْثِيمًا ﴿٢٥﴾

२५) त्यहाँ न व्यर्थका कुरा सुन्नेछन् र न गुनाहका ।

إِلَّا قِيلًا سَلَٰمًا سَلَٰمًا ﴿٢٦﴾

२६) उनीहरूको आपसमा सलामको आदान-प्रदान मात्र हुनेछ ।

وَأَصْحَٰبُ ٱلْيَمِينِ مَآ أَصْحَٰبُ ٱلْيَمِينِ ﴿٢٧﴾

२७) र दाहिना हातवालाहरू निकै (भाग्यशाली) हुनेछन्,

فِى سِدْرٍ مَّخْضُودٍ ﴿٢٨﴾

२८) उनी काँडा नभएका वैरहरू,

وَطَلْحٍ مَّنضُودٍ ﴿٢٩﴾

२९) र गुच्छेदार केराहरू,

وَظِلٍّ مَّمْدُودٍ ﴿٣٠﴾

३०) र परसम्म फैलिएका छाँयाहरू,

وَمَآءٍ مَّسْكُوبٍ ﴿٣١﴾

३१) र पानीका झरनाहरू,

وَفَٰكِهَةٍ كَثِيرَةٍ ﴿٣٢﴾

३२) र प्रशस्त फलहरूमा,

لَّا مَقْطُوعَةٍ وَلَا مَمْنُوعَةٍ ﴿٣٣﴾

३३) जुन कहिल्यै समाप्त हुने छैनन् र उनीबाट कसैले रोक्ने छैन,

وَفُرُشٍ مَّرْفُوعَةٍ ﴿٣٤﴾

३४) र अग्ला, अग्ला ओछ्यानमा हुनेछन्,

إِنَّآ أَنشَأْنَٰهُنَّ إِنشَآءً ﴿٣٥﴾

३५) हामीले उनीहरूका स्वास्नीहरूलाई विशेष प्रकारले सृष्टि गरेका छौं ।

فَجَعَلْنَٰهُنَّ أَبْكَارًا ﴿٣٦﴾

३६) अनि उनीहरूलाई हामीले कुमारी (पवित्र) बनायौं ।

عُرُبًا أَتْرَابًا ﴿٣٧﴾

३७) समान उमेरकी र मायालु ।

لِّأَصْحَٰبِ ٱلْيَمِينِ ﴿٣٨﴾

३८) दाहिने हातवालाहरूको निम्ति हुन् ।

ثُلَّةٌ مِّنَ ٱلْأَوَّلِينَ ﴿٣٩﴾

३९) यिनीहरूमा अघिल्ला मध्येका पनि धेरै हुनेछन् ।

وَثُلَّةٌ مِّنَ ٱلْءَاخِرِينَ ﴿٤٠﴾

४०) र पछिल्ला मध्येका पनि धेरै हुनेछन्,

४१) र बाँया हातवालाहरू, (अफशोच) बाँया हातवाला कस्ता छन् ।

وَاَصۡحٰبُ الشِّمَالِ ۙ مَاۤ اَصۡحٰبُ الشِّمَالِ ﴿٤١﴾

४२) गर्म हवा र उम्लिराखेको पानीमा हुनेछन् ।

فِیۡ سَمُوۡمٍ وَّ حَمِیۡمٍ ﴿٤٢﴾

४३) र कालो धुवाँको छाँयामा,

وَّ ظِلٍّ مِّنۡ یَّحۡمُوۡمٍ ﴿٤٣﴾

४४) जुन न चिसो छ न रुचाउने योग्य ।

لَّا بَارِدٍ وَّ لَا كَرِیۡمٍ ﴿٤٤﴾

४५) निःसंदेह उनीहरू यसभन्दा पहिला धेरै सुख सुविधामा थिए ।

اِنَّهُمۡ كَانُوۡا قَبۡلَ ذٰلِكَ مُتۡرَفِیۡنَ ﴿٤٥﴾

४६) र ठूला-ठूला पापहरू गर्दै बसेका थिए,

وَ كَانُوۡا یُصِرُّوۡنَ عَلَی الۡحِنۡثِ الۡعَظِیۡمِ ﴿٤٦﴾

४७) र भन्ने गर्दथे कि के जब हामी मृत भइहाल्ने छौं र माटो र हाड भइहाल्ने छौं, हामी फेरि उठाइने छौं ?

وَ كَانُوۡا یَقُوۡلُوۡنَ ۬ۙ اَئِذَا مِتۡنَا وَ كُنَّا تُرَابًا وَّ عِظَامًا ءَاِنَّا لَمَبۡعُوۡثُوۡنَ ﴿٤٧﴾

४८) र के हाम्रा बाबु बाजे पनि ?

اَوَ اٰبَآؤُنَا الۡاَوَّلُوۡنَ ﴿٤٨﴾

४९) तपाई भनिदिनुस् कि निःसन्देह पहिला र पछिका,

قُلۡ اِنَّ الۡاَوَّلِیۡنَ وَ الۡاٰخِرِیۡنَ ﴿٤٩﴾

५०) सबै एउटा निर्धारित दिनको समयमा अवश्य एकत्रित गरिनेछन् ।

لَمَجۡمُوۡعُوۡنَ ۬ۙ اِلٰی مِیۡقَاتِ یَوۡمٍ مَّعۡلُوۡمٍ ﴿٥٠﴾

५१) अनि तिमी हे असत्य ठहराउनेवाला पथ विचलितहरू,

ثُمَّ اِنَّكُمۡ اَیُّهَا الضَّآلُّوۡنَ الۡمُكَذِّبُوۡنَ ﴿٥١﴾

५२) थूहर (क्याक्टस) को वृक्ष खानेछौ ।

لَاٰكِلُوۡنَ مِنۡ شَجَرٍ مِّنۡ زَقُّوۡمٍ ﴿٥٢﴾

५३) र यसैले पेट भर्ने छौ !

فَمَالِـُٔوۡنَ مِنۡهَا الۡبُطُوۡنَ ﴿٥٣﴾

५४) र यसमाथि उम्लिराखेको पानी पिउनेछौ !

فَشٰرِبُوۡنَ عَلَیۡهِ مِنَ الۡحَمِیۡمِ ﴿٥٤﴾

فَشٰرِبُوْنَ شُرْبَ الْهِيْمِ ۝٥٥

५५) र पिउँदा पनि (यसप्रकार पिउनेछौं जस्तो कि) तिर्खाएको ऊँट जस्तो !

هٰذَا نُزُلُهُمْ يَوْمَ الدِّيْنِ ۝٥٦

५६) कयामतको दिन उनीहरूको सत्कार हो यो !

نَحْنُ خَلَقْنٰكُمْ فَلَوْلَا تُصَدِّقُوْنَ ۝٥٧

५७) हामीले तिमी सबैलाई सृष्टि गरेका हौं, तसर्थ तिमीले किन (सत्य) मान्दैनौ ?

اَفَرَءَيْتُمْ مَّا تُمْنُوْنَ ۝٥٨

५८) हेर जुन तिमीले वीर्य (स्वास्नीमा) छाड्छौ !

ءَاَنْتُمْ تَخْلُقُوْنَهٗٓ اَمْ نَحْنُ الْخٰلِقُوْنَ ۝٥٩

५९) के तिमीले त्यसबाट मानिसको सृष्टि गर्दछौ वा हामीले नै सृष्टि गर्दछौं !

نَحْنُ قَدَّرْنَا بَيْنَكُمُ الْمَوْتَ وَمَا نَحْنُ بِمَسْبُوْقِيْنَ ۝٦٠

६०) हामीले नै तिमीमा मृत्यु निर्धारित गरिदिएका छौं र हामी त्यसबाट हारेका होइनौं ।

عَلٰٓى اَنْ نُّبَدِّلَ اَمْثَالَكُمْ وَنُنْشِئَكُمْ فِيْ مَا لَا تَعْلَمُوْنَ ۝٦١

६१) कि हामीले तिम्रा ठाउँमा अरु तिमीहरू जस्तालाई पैदा गर्न सक्छौ र तिमीलाई नयाँ रूपमा त्यस संसारमा पैदा गरिदिन्छौं जसको बारेमा तिमलिाई थाहा छैन ।

وَلَقَدْ عَلِمْتُمُ النَّشْاَةَ الْاُوْلٰى فَلَوْلَا تَذَكَّرُوْنَ ۝٦٢

६२) तिमीलाई पहिलो पटकको जन्म थाहा छ, अनि तिमीले किन शिक्षा ग्रहण गर्दैनौ ?

اَفَرَءَيْتُمْ مَّا تَحْرُثُوْنَ ۝٦٣

६३) अनि यो पनि बताऊ जुन तिमीले उब्जाउँछौ ?

ءَاَنْتُمْ تَزْرَعُوْنَهٗٓ اَمْ نَحْنُ الزّٰرِعُوْنَ ۝٦٤

६४) के तिमीले नै त्यसलाई उब्जाउछौं वा हामी उब्जाउने वाला हौं ?

لَوْ نَشَآءُ لَجَعَلْنٰهُ حُطٰمًا فَظَلْتُمْ تَفَكَّهُوْنَ ﴿٦٥﴾

६५) यदि हामीले चाहृयौं भने त्यसलाई भुसा गरिदिन्छौं र तिमी कुरा गर्दै रहनेछौ ।

اِنَّا لَمُغْرَمُوْنَ ﴿٦٦﴾

६६) (कि अफशोच) हामी त सित्तैमा दण्डमा परिहाल्यौं,

بَلْ نَحْنُ مَحْرُوْمُوْنَ ﴿٦٧﴾

६७) बरु हामी बिल्कुलै वञ्चित रहयौं ।

اَفَرَءَيْتُمُ الْمَآءَ الَّذِيْ تَشْرَبُوْنَ ﴿٦٨﴾

६८) अनि यो बताऊ तिमीले जुन पानीलाई पिउँछौ ।

ءَاَنْتُمْ اَنْزَلْتُمُوْهُ مِنَ الْمُزْنِ اَمْ نَحْنُ الْمُنْزِلُوْنَ ﴿٦٩﴾

६९) उसलाई बादलबाट पनि तिमीले नै बर्साएका हौ वा हामीले बर्साउँछौं ?

لَوْ نَشَآءُ جَعَلْنٰهُ اُجَاجًا فَلَوْلَا تَشْكُرُوْنَ ﴿٧٠﴾

७०) यदि हामीले चाहृयौं भने त्यस पानीलाई खारा बनाइदिन्छौं ? अनि तिमीले कृतज्ञता किन प्रकट गर्दैनौ ?

اَفَرَءَيْتُمُ النَّارَ الَّتِيْ تُوْرُوْنَ ﴿٧١﴾

७१) हेर यो पनि बताऊ कि जुन आगो तिमीले सल्काउँछौ,

ءَاَنْتُمْ اَنْشَاْتُمْ شَجَرَتَهَآ اَمْ نَحْنُ الْمُنْشِـُٔوْنَ ﴿٧٢﴾

७२) (के तिमीले) त्यस रुखलाई सृष्टि गर्दछौ वा हामीले त्यसको सृष्टि गरेका छौं ?

نَحْنُ جَعَلْنٰهَا تَذْكِرَةً وَّمَتَاعًا لِّلْمُقْوِيْنَ ﴿٧٣﴾

७३) हामीले उसलाई एउटा उपदेशको माध्यम र यात्रीहरू (र आवश्यक पर्नेहरूका) लागि लाभप्रद बनाएकाछौं ।

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيْمِ ﴿٧٤﴾

७४) अतः तिमीले आफ्नो महान् पालनकर्ताको गुणगान गर ।

فَلَآ اُقْسِمُ بِمَوٰقِعِ النُّجُوْمِ ﴿٧٥﴾

७५) म खस्ने ताराहरूको क़सम खान्छु ।

وَاِنَّهٗ لَقَسَمٌ لَّوْ تَعْلَمُوْنَ عَظِيْمٌ ﴿٧٦﴾

७६) र यदि तिमीले बुझ्छौ भने यो ठूलो क़सम हो,

| | |
|---|---|
| ७७) निश्चय नै यो धेरै प्रतिष्ठित कुरआन हो, | إِنَّهُۥ لَقُرۡءَانٞ كَرِيمٞ ٧٧ |
| ७८) जो एउटा सुरक्षित किताबमा अंकित छ । | فِي كِتَٰبٖ مَّكۡنُونٖ ٧٨ |
| ७९) त्यसलाई पवित्र (फरिश्ताहरू) मात्र हात लगाउँछन् । | لَّا يَمَسُّهُۥٓ إِلَّا ٱلۡمُطَهَّرُونَ ٧٩ |
| ८०) सम्पूर्ण संसारको स्वामीको तर्फबाट अवतरित गरिएको छ । | تَنزِيلٞ مِّن رَّبِّ ٱلۡعَٰلَمِينَ ٨٠ |
| ८१) के तिमीले त्यस वाणीलाई साधारण ठान्छौ ? | أَفَبِهَٰذَا ٱلۡحَدِيثِ أَنتُم مُّدۡهِنُونَ ٨١ |
| ८२) र आफ्नो भागमा यो लिन्छौ कि यसलाई भ्रूठो ठहराउँदै गर ? | وَتَجۡعَلُونَ رِزۡقَكُمۡ أَنَّكُمۡ تُكَذِّبُونَ ٨٢ |
| ८३) अनि जब प्राण कण्ठमा आइपुग्दछ, | فَلَوۡلَآ إِذَا بَلَغَتِ ٱلۡحُلۡقُومَ ٨٣ |
| ८४) र तिमीले त्यस समय आखाँले हेरिराखेको हुन्छौ, | وَأَنتُمۡ حِينَئِذٖ تَنظُرُونَ ٨٤ |
| ८५) र हामी त्यस बेला तिमी भन्दा धेरै नजिक हुन्छौं तर तिमीले देख्दैनौ । | وَنَحۡنُ أَقۡرَبُ إِلَيۡهِ مِنكُمۡ وَلَٰكِن لَّا تُبۡصِرُونَ ٨٥ |
| ८६) अतः यदि तिमी कसैको अधीनमा छैनौ । | فَلَوۡلَآ إِن كُنتُمۡ غَيۡرَ مَدِينِينَ ٨٦ |
| ८७) र यस कुरामा यदि साँचो हौ, त यस प्राणलाई किन फर्काउँदैनौ ? | تَرۡجِعُونَهَآ إِن كُنتُمۡ صَٰدِقِينَ ٨٧ |
| ८८) अनि यदि कोही (अल्लाहको) दरबारको नजीक गरिएको हुनेछ । | فَأَمَّآ إِن كَانَ مِنَ ٱلۡمُقَرَّبِينَ ٨٨ |
| ८९) भने उसको निम्ति आराम, सुख-सामग्री र आराम दायक स्वर्गहरू छन् । | فَرَوۡحٞ وَرَيۡحَانٞ وَجَنَّتُ نَعِيمٖ ٨٩ |

وَأَمَّآ إِن كَانَ مِنْ أَصْحَٰبِ ٱلْيَمِينِ ﴿٩٠﴾

९०) र जो दाहिने हातावाला मध्येको छ,

فَسَلَٰمٌ لَّكَ مِنْ أَصْحَٰبِ ٱلْيَمِينِ ﴿٩١﴾

९१) तिमीलाई सलाम छ कि तिमी भाग्यशाली मध्येका छौ ।

وَأَمَّآ إِن كَانَ مِنَ ٱلْمُكَذِّبِينَ ٱلضَّآلِّينَ ﴿٩٢﴾

९२) तर यदि कोही त्यो झूठा ठहराउने र मार्ग बिचलितहरू मध्येको छ,

فَنُزُلٌ مِّنْ حَمِيمٍ ﴿٩٣﴾

९३) त उसको लागि उम्लिराखेको पानीको आतिथ्य छ,

وَتَصْلِيَةُ جَحِيمٍ ﴿٩٤﴾

९४) र (फेरि) नर्क मा जानु छ ।

إِنَّ هَٰذَا لَهُوَ حَقُّ ٱلْيَقِينِ ﴿٩٥﴾

९५) निःसन्देह यो (खबर) पूरै सत्य हो ।

فَسَبِّحْ بِٱسْمِ رَبِّكَ ٱلْعَظِيمِ ﴿٩٦﴾

९६) अतः तिमीले आफ्नो महान् पालनकर्ताको गुणगान गरिराख ।



# सूरतुल् हदीद-५७




सूरतुल् हदीद मदनी हो, यसमा २९ आयतहरू र ४ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) आकाशहरू र धरतीमा जे छ सबैले अल्लाह कै गुणगान गर्दैछन् र ऊ अधिपत्यशाली ठूलो तत्वदर्शी छ ।

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

२) आकाशहरू र धरतीको सत्ता उसैको हो, उसैले जीवन दिन्छ र मृत्यु पनि र ऊ प्रत्येक कुरामा सामर्थ्य सम्पन्न छ ।

لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ يُحْيٖ وَيُمِيْتُ ۚ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ②

३) उही पहिला हो र अन्तिम पनि । व्यक्त हो र अव्यक्त पनि । र ऊ हरेक कुरा राम्ररी जान्दछ ।

هُوَ الْاَوَّلُ وَالْاٰخِرُ وَالظَّاهِرُ وَالْبَاطِنُ ۚ وَهُوَ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ③

४) उही हो जसले आकाशहरू र पृथ्वीलाई छः दिनमा सृष्टि गर्‍यो अनि सिंहासनमाथि उच्च भयो । ऊ जान्दछ जे जति धरतीमा प्रवेश गर्दछ र जे-जति उसबाट निस्कन्छ, र जे-जति आकाशबाट अवतरित हुन्छ र जे-जति उसमा चढ्दछ । र तिमी जहाँसुकै भए पनि ऊ तिम्रो साथमा छ र अल्लाह देख्दछ, जे-जति तिमीले गर्दछौ ।

هُوَ الَّذِيْ خَلَقَ السَّمٰوٰتِ وَالْاَرْضَ فِيْ سِتَّةِ اَيَّامٍ ثُمَّ اسْتَوٰى عَلَى الْعَرْشِ ۚ يَعْلَمُ مَا يَلِجُ فِي الْاَرْضِ وَمَا يَخْرُجُ مِنْهَا وَمَا يَنْزِلُ مِنَ السَّمَآءِ وَمَا يَعْرُجُ فِيْهَا ۚ وَهُوَ مَعَكُمْ اَيْنَ مَا كُنْتُمْ ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ④

५) आकाशहरू र धरतीको सत्ता उसैको हो र अल्लाह तिर नै सबै कुरा फर्काइन्छन् ।

لَهٗ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَاِلَى اللّٰهِ تُرْجَعُ الْاُمُوْرُ ⑤

६) उसैले रातलाई दिनमा प्रविष्ट गराउँदछ र दिनलाई रातमा प्रविष्ट गराउँदछ । उसले छातीमा लुकेका कुराहरू पनि जान्दछ ।

يُولِجُ الَّيْلَ فِي النَّهَارِ وَيُولِجُ النَّهَارَ فِي الَّيْلِ ۚ وَهُوَ عَلِيمٌ بِذَاتِ الصُّدُورِ ﴿٦﴾

७) (तसर्थ) अल्लाह र उसका रसूलमाथि ईमान ल्याऊ र जुन मालसामानमा उसले तिमीलाई अरुहरूको उत्तराधिकारी बनाएको छ त्यसमध्येबाट खर्च गर । त तिमीहरू मध्ये जसले ईमान ल्याए र खर्च (दान) गरिरहे उनीहरूको निम्ति ठूलो प्रतिफल छ ।

اٰمِنُوا بِاللّٰهِ وَرَسُولِهٖ وَاَنْفِقُوا مِمَّا جَعَلَكُمْ مُسْتَخْلَفِينَ فِيهِ ۗ فَالَّذِينَ اٰمَنُوا مِنْكُمْ وَاَنْفَقُوا لَهُمْ اَجْرٌ كَبِيرٌ ﴿٧﴾

८) तिमीहरू अल्लाहमाथि ईमान किन ल्याउँदैनौ, जब कि पैगम्बरहरूले तिमीलाई तिम्रो रब माथि ईमान ल्याउन आमन्त्रण गरिराखेका छन् । र यदी तिमी ईमानवाला हौ भने उसले तिमीसित दृढ वचन पनि लिइसकेको छ ।

وَمَا لَكُمْ لَا تُؤْمِنُونَ بِاللّٰهِ ۚ وَالرَّسُولُ يَدْعُوكُمْ لِتُؤْمِنُوا بِرَبِّكُمْ وَقَدْ اَخَذَ مِيثَاقَكُمْ اِنْ كُنْتُمْ مُؤْمِنِينَ ﴿٨﴾

९) उही अल्लाह हो जसले आफ्नो भक्तहरूमाथि स्पष्ट आयतहरू उतारिराखेको छ ताकि उसले तिमीलाई अन्धकारहरूबाट प्रकाशतिर ल्याओस् । वास्तविकता यो छ कि अल्लाह तिमीमाथि अत्यन्त करुणामय र दयावान छ ।

هُوَ الَّذِي يُنَزِّلُ عَلٰى عَبْدِهٖٓ اٰيَاتٍ بَيِّنَاتٍ لِيُخْرِجَكُمْ مِنَ الظُّلُمَاتِ اِلَى النُّورِ ۚ وَاِنَّ اللّٰهَ بِكُمْ لَرَءُوفٌ رَحِيمٌ ﴿٩﴾

१०) तिमीलाई के भएको छ कि अल्लाहको बाटोमा खर्च गर्दैनौ ? जब कि आकाशहरू र जमिनको

وَمَا لَكُمْ اَلَّا تُنْفِقُوا فِي سَبِيلِ اللّٰهِ وَلِلّٰهِ مِيرَاثُ السَّمٰوٰتِ وَالْاَرْضِ ۚ لَا يَسْتَوِي مِنْكُمْ مَنْ اَنْفَقَ مِنْ قَبْلِ الْفَتْحِ وَقَاتَلَ ۚ اُولٰٓئِكَ اَعْظَمُ دَرَجَةً

مِّنَ الَّذِيْنَ اَنْفَقُوْا مِنْۢ بَعْدُ وَقٰتَلُوْا ۚ وَكُلًّا وَّعَدَ اللّٰهُ الْحُسْنٰى ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ﴿١٠﴾

स्वामित्व अल्लाह कै निम्ति छ, तिमीहरू मध्ये जुन व्यक्तिले (मक्काको) विजय भन्दा पहिला खर्च गऱ्यो र लडाई गऱ्यो उनीहरू अरुको समान हुन सक्दैनन् । उनीहरूको दर्जा ती मानिसहरू भन्दा बढी छ, जसले पछि खर्च गरे र धर्म युद्ध गरे । हो अल्लाहले सबैलाई भलाईको वचन त दिएको छ र जुन काम तिमीले गर्दछौ अल्लाह त्यसलाई जान्दछ ।

مَنْ ذَا الَّذِيْ يُقْرِضُ اللّٰهَ قَرْضًا حَسَنًا فَيُضٰعِفَهٗ لَهٗ وَلَهٗۤ اَجْرٌ كَرِيْمٌ ﴿١١﴾

११) को छ जसले अल्लाहलाई राम्रो ऋण देओस्, कि उसले त्यसलाई उसको निम्ति धेरै गुणा बढाउँदै गरुन् । र उसको निम्ति सम्मानित प्रतिफल छ ।

يَوْمَ تَرَى الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ يَسْعٰى نُوْرُهُمْ بَيْنَ اَيْدِيْهِمْ وَبِاَيْمَانِهِمْ بُشْرٰىكُمُ الْيَوْمَ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ؕ ذٰلِكَ هُوَ الْفَوْزُ الْعَظِيْمُ ﴿١٢﴾

१२) कयामतको दिन तिमीले मोमिन पुरुषहरूलाई र मोमिन स्त्रीहरूलाई उनको प्रकाश उनीहरूको अगाडि अगाडि र दायाँ तिर हिंडिराखेको देख्नेछौ । (उनीसित भनिने छ कि) तिमीलाई शुभ समाचार छ आज तिम्रो निम्ति यस्ता बगैंचाहरूको, जसका धरातलमा नहरहरू बगिराखेका छन्, तिनीहरूमा सदैंव रहनेछौं यही ठूलो सफलता हो ।

يَوْمَ يَقُوْلُ الْمُنٰفِقُوْنَ وَالْمُنٰفِقٰتُ لِلَّذِيْنَ اٰمَنُوا انْظُرُوْنَا نَقْتَبِسْ مِنْ نُّوْرِكُمْ ۚ قِيْلَ ارْجِعُوْا وَرَآءَكُمْ فَالْتَمِسُوْا نُوْرًا ؕ فَضُرِبَ بَيْنَهُمْ بِسُوْرٍ لَّهٗ بَابٌ ؕ بَاطِنُهٗ فِيْهِ الرَّحْمَةُ وَظَاهِرُهٗ مِنْ قِبَلِهِ الْعَذَابُ ﴿١٣﴾

१३) त्यसदिन कपटी पुरुष र स्त्रीहरू मोमिनहरूसित भन्ने छन् कि हाम्रो प्रतीक्षा त गर कि हामीले पनि तिम्रो प्रकाशबाट केही प्रकाश हासिल

गरौं त उनीहरूसित भनिने छ कि तिमी पछाडि फर्केर जाऊ, (त्यहाँ) अरु प्रकाश खोज, अनि उनीहरूको बीचमा एउटा पर्खाल उभ्याइने छ, जसमा ढोका पनि हुनेछ उसको भित्री भागमा (अल्लाहको) कृपा हुनेछ र बाहिर सजाय हुनेछ ।

१४) यिनीहरूले (कपटाचारीहरूले मोमिनहरूसित) कराएर भन्ने छन् कि के हामी तिम्रो साथमा थिएनौं, उनीहरूले भन्ने छन् किन थिएनौ, तर तिमीले स्वयं आफूले नै आफूलाई विचलनमा पाऱ्यौ र प्रतिक्षा गरिराख्यौ र सन्देहमा परिरह्यौ र तिम्रा व्यर्थका कामनाहरूले तिमीलाई धोकामा राखे, यहाँसम्म कि अल्लाहको फैसला आइहाल्यो र तिमीलाई अल्लाहको बारेमा धोका दिनेले धोकामै राखी राख्यो ।

يُنَادُونَهُمْ أَلَمْ نَكُن مَّعَكُمْ ۖ قَالُوا بَلَىٰ وَلَٰكِنَّكُمْ فَتَنتُمْ أَنفُسَكُمْ وَتَرَبَّصْتُمْ وَارْتَبْتُمْ وَغَرَّتْكُمُ الْأَمَانِيُّ حَتَّىٰ جَاءَ أَمْرُ اللَّهِ وَغَرَّكُم بِاللَّهِ الْغَرُورُ ﴿١٤﴾

१५) तसर्थ आज न त तिमीबाट कुनै फिदिया (बदला) स्वीकार गरिनेछ र न काफिरहरूबाट । तिमी सबैको ठेगाना नर्क हो त्यो नै तिमीहरूको साथी हो र त्यो नराम्रो ठेगाना हो ।

فَالْيَوْمَ لَا يُؤْخَذُ مِنكُمْ فِدْيَةٌ وَلَا مِنَ الَّذِينَ كَفَرُوا ۚ مَأْوَاكُمُ النَّارُ ۖ هِيَ مَوْلَاكُمْ ۖ وَبِئْسَ الْمَصِيرُ ﴿١٥﴾

१६) के मोमिनहरूको निम्ति अहिले पनि यस्तो समय अएको छैन कि उनीहरूका हृदय अल्लाहको लागि र जुन सत्य अवतरित भयो त्यसको लागि नर्म होस् ? र उनीहरू जस्ता

أَلَمْ يَأْنِ لِلَّذِينَ آمَنُوا أَن تَخْشَعَ قُلُوبُهُمْ لِذِكْرِ اللَّهِ وَمَا نَزَلَ مِنَ الْحَقِّ وَلَا يَكُونُوا كَالَّذِينَ أُوتُوا الْكِتَابَ مِن قَبْلُ فَطَالَ عَلَيْهِمُ الْأَمَدُ فَقَسَتْ قُلُوبُهُمْ ۖ وَكَثِيرٌ مِّنْهُمْ فَاسِقُونَ ﴿١٦﴾

नभइहालोस् जसलाई उनीभन्दा अगाडि किताब प्रदान गरेको थियो । अनि त्यस पश्चात लामो काल खण्ड बीत्यो । अनी उनीहरूका दिल कठोर भइहाले र उनीहरूमध्ये अधिकांश अवज्ञाकारी छन् ।

اِعْلَمُوْٓا اَنَّ اللّٰهَ يُحْيِ الْاَرْضَ بَعْدَ مَوْتِهَا ۗ قَدْ بَيَّنَّا لَكُمُ الْاٰيٰتِ لَعَلَّكُمْ تَعْقِلُوْنَ ﴿١٧﴾

१७) जानी राख कि अल्लाह नै धरतीलाई उसको मृत्यु पश्चात जीवन प्रदान गर्दछ । हामीले तिम्रो निम्ति हाम्रा आयतहरूलाई स्पष्ट रूपले वर्णन गरिदिएका छौं, ताकि तिमी बुझ ।

اِنَّ الْمُصَّدِّقِيْنَ وَالْمُصَّدِّقٰتِ وَاَقْرَضُوا اللّٰهَ قَرْضًا حَسَنًا يُّضٰعَفُ لَهُمْ وَلَهُمْ اَجْرٌ كَرِيْمٌ ﴿١٨﴾

१८) निःसंदेह खैरात (दान) गर्नेवाला, पुरुषहरू र स्त्रीहरू र जसले अल्लाहलाई राम्रो ऋण दिन्छन्, त्यसलाई उनको निम्ति कैयौं गुणा प्रदान गरिनेछ र उनीहरूको निम्ति सम्मानित प्रतिफल छ ।

وَالَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖٓ اُولٰٓئِكَ هُمُ الصِّدِّيْقُوْنَ ۖ وَالشُّهَدَاۤءُ عِنْدَ رَبِّهِمْ ۗ لَهُمْ اَجْرُهُمْ وَنُوْرُهُمْ ۗ وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ الْجَحِيْمِ ﴿١٩﴾

१९) र जुन मानिसहरू अल्लाह र उसका पैगम्बरहरूमाथि ईमान ल्याए उनीहरू आफ्ना पालनकर्ताको समीपमा साँचो र शहीद छन् । उनीहरूको निम्ति उनीहरूको प्रतिफल र प्रकाश छ र जसले कुफ्र गरे र हाम्रा आयतहरूलाई असत्य ठहराए तिनीहरू नारकी हुन् ।

اِعْلَمُوْٓا اَنَّمَا الْحَيٰوةُ الدُّنْيَا لَعِبٌ وَّلَهْوٌ وَّزِيْنَةٌ وَّتَفَاخُرٌ ۢ بَيْنَكُمْ وَتَكَاثُرٌ فِى الْاَمْوَالِ وَالْاَوْلَادِ ۗ كَمَثَلِ غَيْثٍ اَعْجَبَ الْكُفَّارَ نَبَاتُهٗ ثُمَّ يَهِيْجُ فَتَرٰىهُ مُصْفَرًّا ثُمَّ يَكُوْنُ حُطٰمًا ۗ وَفِى الْاٰخِرَةِ عَذَابٌ شَدِيْدٌ ۙ وَّمَغْفِرَةٌ مِّنَ

२०) जानीराख कि संसारको जीवन एउटा खेल र तमाशा र, सजावट हो र तिम्रो आपसमा एक अर्कामाथि घमण्ड दर्शाउने र मात्र धन र सन्तानको

اللّٰهِ وَرِضْوَانٌ ۚ وَمَا الْحَيٰوةُ الدُّنْيَآ اِلَّا مَتَاعُ الْغُرُوْرِ ﴿٢٠﴾

कुरामा परस्पर एक अर्काभन्दा बढी भएको प्रदर्शित गर्नु हो । जस्तो वर्षा र त्यसद्वारा उब्जनी किसानलाई राम्रो लाग्दछ । अनि त्यो जब पाकिहाल्छ, अनि तिमीले देख्छौ कि पहेंलो भइहाल्यो । अनि त्यसपछि त्यो चूर-चूर भइहाल्छ । र कयामतमा कठोर यातना पनि छ र अल्लाहको क्षमा र प्रसन्नता पनि छ । र सांसारिक जीवन त मात्र धोकाको सुख सामग्री बाहेक केही होइन ।

سَابِقُوْٓا اِلٰى مَغْفِرَةٍ مِّنْ رَّبِّكُمْ وَجَنَّةٍ عَرْضُهَا كَعَرْضِ السَّمَآءِ وَ الْاَرْضِ ۙ اُعِدَّتْ لِلَّذِيْنَ اٰمَنُوْا بِاللّٰهِ وَرُسُلِهٖ ۚ ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ۚ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٢١﴾

२१) (आऊ) आफ्नो पालनकर्ताको क्षमा र त्यस स्वर्गतिर अग्रसर होऊ जसको आकार आकाश र धरती बराबर छ, जुन ती मानिसहरूको निम्ति तयार गरिएको छ जसले अल्लाह र उसका रसुलहरूमाथि ईमान राख्दछन् । यो अल्लाहको उदार अनुग्रह हो, जसलाई चाहन्छ प्रदान गर्छ । र अल्लाह धेरै उदार ठूलो अनुग्रहको स्वामी हो ।

مَآ اَصَابَ مِنْ مُّصِيْبَةٍ فِى الْاَرْضِ وَلَا فِيْٓ اَنْفُسِكُمْ اِلَّا فِيْ كِتٰبٍ مِّنْ قَبْلِ اَنْ نَّبْرَاَهَا ۭ اِنَّ ذٰلِكَ عَلَى اللّٰهِ يَسِيْرٌ ﴿٢٢﴾

२२) जुनसुकै मुसीबत (दुःख संकट) धरतीमा आउँछ या तिमीमाथि त्यसलाई मैले पठाउनु भन्दा पहिला एउटा किताबमा अंकित हुन्छ । यो काम अल्लाहको निम्ति सजिलो छ ।

لِّكَيْلَا تَاْسَوْا عَلٰى مَا فَاتَكُمْ وَلَا تَفْرَحُوْا بِمَآ اٰتٰىكُمْ ۭ وَاللّٰهُ لَا يُحِبُّ كُلَّ مُخْتَالٍ فَخُوْرِ ﴿٢٣﴾

२३) ताकि तिमीले त्यसकुराबाट अफशोच नगर जुन कि तिमीबाट गुज्रिसकेको छ, र न त्यस कुरामाथि अभिमान

गर जुन उसले तिमीलाई प्रदान गरेको छ । अल्लाहलाई कुनै घमण्डी र आत्म प्रशंशकहरू मन पराउँदैनन् ।

ٱلَّذِينَ يَبْخَلُونَ وَيَأْمُرُونَ ٱلنَّاسَ بِٱلْبُخْلِ ۗ وَمَن يَتَوَلَّ فَإِنَّ ٱللَّهَ هُوَ ٱلْغَنِىُّ ٱلْحَمِيدُ ﴿٢٤﴾

२४) जो स्वयं कञ्जूसी गर्दछन् र अरुहरूलाई पनि कञ्जूसी गर्न प्रेरित गर्दछन् र (सुनिराख) जो कोही पनि विमुख होस्, अल्लाह त निस्पृह प्रशंसनीय छ ।

لَقَدْ أَرْسَلْنَا رُسُلَنَا بِٱلْبَيِّنَٰتِ وَأَنزَلْنَا مَعَهُمُ ٱلْكِتَٰبَ وَٱلْمِيزَانَ لِيَقُومَ ٱلنَّاسُ بِٱلْقِسْطِ ۖ وَأَنزَلْنَا ٱلْحَدِيدَ فِيهِ بَأْسٌ شَدِيدٌ وَمَنَٰفِعُ لِلنَّاسِ وَلِيَعْلَمَ ٱللَّهُ مَن يَنصُرُهُۥ وَرُسُلَهُۥ بِٱلْغَيْبِ ۚ إِنَّ ٱللَّهَ قَوِىٌّ عَزِيزٌ ﴿٢٥﴾

२५) निश्चय नै हामीले आफ्ना पैगम्बरहरूलाई स्पष्ट निशानीहरू दिएर पठायौं र उनीहरूमाथि किताब र तुला अवतरित गऱ्यौं ताकि मानिसहरू न्यायमा दृढ रहुन् र फलाम पनि उतार्यौं । त्यसमा ठूलो खतरा छ र निकै बलियो छ र मानिसहरूका लागि अरु पनि फाइदाहरू छन्, र यस कारण पनि कि अल्लाह थाहा पाइहालोस् कि को परोक्षमा रहँदै उसको र उसका रसूलहरूको सहायता गर्दछ । निश्चय नै अल्लाह शक्तिशाली र अधिपत्यशाली छ ।

وَلَقَدْ أَرْسَلْنَا نُوحًا وَإِبْرَٰهِيمَ وَجَعَلْنَا فِى ذُرِّيَّتِهِمَا ٱلنُّبُوَّةَ وَٱلْكِتَٰبَ ۖ فَمِنْهُم مُّهْتَدٍ ۖ وَكَثِيرٌ مِّنْهُمْ فَٰسِقُونَ ﴿٢٦﴾

२६) र हामीले "नूह" र "इब्राहीम(अ.)लाई" संदेष्टा बनाएर पठायौं र उनीहरूको सन्ततिमा पैगम्बरी र किताबलाई (अल्लाह बाट अवतरित हुने)जारी राख्यौं अनि उनीहरूमध्ये केही त सत्मार्ग अपनाए, किन्तु उनीहरूमध्ये धेरै त अवज्ञाकारी नै रहे ।

ثُمَّ قَفَّيْنَا عَلَىٰٓ اٰثَارِهِمْ بِرُسُلِنَا وَقَفَّيْنَا بِعِيْسَى ابْنِ مَرْيَمَ وَاٰتَيْنٰهُ الْاِنْجِيْلَ ۙ وَجَعَلْنَا فِيْ قُلُوْبِ الَّذِيْنَ اتَّبَعُوْهُ رَاْفَةً وَّرَحْمَةً ۭ وَرَهْبَانِيَّةَ ِۨ ابْتَدَعُوْهَا مَا كَتَبْنٰهَا عَلَيْهِمْ اِلَّا ابْتِغَاۗءَ رِضْوَانِ اللّٰهِ فَمَا رَعَوْهَا حَقَّ رِعَايَتِهَا ۚ فَاٰتَيْنَا الَّذِيْنَ اٰمَنُوْا مِنْهُمْ اَجْرَهُمْ ۚ وَكَثِيْرٌ مِّنْهُمْ فٰسِقُوْنَ ﴿٢٧﴾

२७) अनि उनीहरू पछि पनि हामीले एक पछि अर्को रसूल पठाउँदै गऱ्यौं र उनी पछि "मरियमका" छोरा "ईसा(अ.)लाई" पठायौं र उनलाई "इन्जील" प्रदान गऱ्यौं र उनको अनुशरण गर्नेहरूको हृदयमा हामीले करुणा र दया सृजना गऱ्यौं । रह्‍यो सन्यासको कुरा त उनीहरूले स्वयं बनाएका थिए हामीले त्यसलाई उनीहरूका निम्ति अनिवार्य गरेका थिएनौं यदि अनिवार्य गरेका थियौं त केवल अल्लाहको प्रसन्नताको चाहना । अनि उनीहरूले त्यसको निर्वाह गर्न सकेनन् । अतः ती मानिसहरूलाई जो तिनीहरू मध्ये ईमान ल्याएका थिए, उनीहरूलाई उनको प्रतिफल हामीले प्रदान गऱ्यौं । तर उनीहरूमध्ये धेरै अवज्ञाकारी नै छन् ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوا اتَّقُوا اللّٰهَ وَاٰمِنُوْا بِرَسُوْلِهٖ يُؤْتِكُمْ كِفْلَيْنِ مِنْ رَّحْمَتِهٖ وَيَجْعَلْ لَّكُمْ نُوْرًا تَمْشُوْنَ بِهٖ وَيَغْفِرْ لَكُمْ ۭ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ﴿٢٨﴾

२८) हे मोमिनहरू ! अल्लाहसित डर र उसको रसुलहरूमाथि ईमान ल्याऊ । अल्लाहले तिमीलाई आफ्नो दयाको दुई गुणा भाग प्रदान गर्ने छ र तिम्रो निम्ति एउटा प्रकाश दिनेछ, जसको प्रकाशमा तिमी हिंड्नेछौ र तिम्रो पाप पनि क्षमा गरिदिनेछ । अल्लाह बडो क्षमाशील र अत्यन्त दयावान छ ।

لِّئَلَّا يَعْلَمَ اَهْلُ الْكِتٰبِ اَلَّا يَقْدِرُوْنَ عَلٰي شَيْءٍ

२९) यो यसकारण कि किताब मान्नेहरूले

مِّنْ فَضْلِ اللّٰهِ وَاَنَّ الْفَضْلَ بِيَدِ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ ۗ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ﴿٢٩﴾

जानीहालुन् कि उनीहरूलाई अल्लाहको अनुग्रहको कुनै भागमाथि केही पनि अधिकार प्राप्त छैन र यो कि सम्पूर्ण अनुग्रह अल्लाह कै हातमा छ, जसलाई चाहन्छ, प्रदान गर्दछ र अल्लाह ठूलो अनुग्रहको स्वामी छ ।



# सूरतुल् मुजादलः -५८




सूरतुल् मुजादलः मदनी हो, यसमा २२ आयतहरू र ३ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) (हे पैगम्बर !) अल्लाहले त्यस स्त्रीको कुरा सुनिहाल्यो, जसले आफ्नो पतिको विषयमा तपाईसित विवाद गरिराखेकी थिई र अल्लाहसित गुनासो गरिराखेकी थिई । अल्लाहले तिमी दुवैको प्रश्नोत्तर सुनिराखेको थियो । निश्चय नै अल्लाह सबै कुरा सुन्नेवाला, देख्नेवाला छ ।

قَدْ سَمِعَ اللّٰهُ قَوْلَ الَّتِيْ تُجَادِلُكَ فِيْ زَوْجِهَا وَتَشْتَكِيْٓ اِلَى اللّٰهِ ۖ وَاللّٰهُ يَسْمَعُ تَحَاوُرَكُمَا ۭ اِنَّ اللّٰهَ سَمِيْعٌۢ بَصِيْرٌ ①

२) तिमीहरू मध्ये जसले आफ्ना स्त्रीहरूसंग ज़िहार गरिहाल्छन् (अर्थात उनीहरूलाई आमा भनिहाल्छन्) तिनीहरू उनीहरूका वास्तविक आमा भइहाल्दैनन् । उनीहरूका आमा त ती नै हुन् जसका पेटबाट उनीहरू जन्मेका छन् । निश्चय नै उनीहरू एउटा अनुचित र असत्य कुरा भन्दछन् (र) अल्लाह बडो दया गर्नेवाला र क्षमाशील छ ।

اَلَّذِيْنَ يُظٰهِرُوْنَ مِنْكُمْ مِّنْ نِّسَاۗىِٕهِمْ مَّا هُنَّ اُمَّهٰتِهِمْ ۭ اِنْ اُمَّهٰتُهُمْ اِلَّا الّٰۗـِٔيْ وَلَدْنَهُمْ ۭ وَاِنَّهُمْ لَيَقُوْلُوْنَ مُنْكَرًا مِّنَ الْقَوْلِ وَزُوْرًا ۭ وَاِنَّ اللّٰهَ لَعَفُوٌّ غَفُوْرٌ ②

३) जसले आफ्नो स्त्रीहरूलाई आमा भनिहाल्दछन्, अनि आफ्नो भनाईतिर पश्चाताप गर्छन् भने उनीहरू पुनः सहवास गर्नुभन्दा पहिला एउटा दास मुक्त गर्नु अनिवार्य छ । यसबाट

وَالَّذِيْنَ يُظٰهِرُوْنَ مِنْ نِّسَاۗىِٕهِمْ ثُمَّ يَعُوْدُوْنَ لِمَا قَالُوْا فَتَحْرِيْرُ رَقَبَةٍ مِّنْ قَبْلِ اَنْ يَّتَمَاۗسَّا ۭ ذٰلِكُمْ تُوْعَظُوْنَ بِهٖ ۭ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ خَبِيْرٌ ③

तिमीलाई नसीहत गरिन्छ र तिमीले जे गर्दछौ, अल्लाहलाई सबै थाहा छ ।

فَمَنْ لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ مِنْ قَبْلِ اَنْ يَّتَمَآسَّا ۚ فَمَنْ لَّمْ يَسْتَطِعْ فَاِطْعَامُ سِتِّيْنَ مِسْكِيْنًا ۚ ذٰلِكَ لِتُؤْمِنُوْا بِاللّٰهِ وَرَسُوْلِهٖ ۚ وَتِلْكَ حُدُوْدُ اللّٰهِ ۚ وَلِلْكٰفِرِيْنَ عَذَابٌ اَلِيْمٌ ④

४) हो, जसलाई दास प्राप्त हुँदैन, त्यसले सहवास भन्दा पहिला निरन्तर दुई महिनासम्म व्रत बसोस् र जसलाई यसको पनि सामर्थ्य छैन त, त्यसले साठी (ग़रिब) पराश्रितहरूलाई भोजन गराओस् । यो यसकारण हो ताकि तिमी अल्लाह र उसको रसूलको आज्ञाकारी बन । यी अल्लाहद्वारा निर्धारित सीमाहरू हुन् र नमान्नेहरूको निम्ति कष्टदायक यातना छ ।

اِنَّ الَّذِيْنَ يُحَآدُّوْنَ اللّٰهَ وَرَسُوْلَهٗ كُبِتُوْا كَمَا كُبِتَ الَّذِيْنَ مِنْ قَبْلِهِمْ وَقَدْ اَنْزَلْنَآ اٰيٰتٍۭ بَيِّنٰتٍ ۚ وَلِلْكٰفِرِيْنَ عَذَابٌ مُّهِيْنٌ ⑤

५) निःसंदेह जुन मानिसहरूले अल्लाह र उसको रसूलको विरोध गर्दछन्, उनीहरू अपमानित गरिनेछन्, जुन तरिकाले कि उनीभन्दा पहिला अपमानित गरिएका थिए र हामीले स्पष्ट र खुल्ला आयतहरू अवतरित गरिदिएका छौं । र जसले मान्दैनन् उनीहरूलाई अपमानजनक यातना छ ।

يَوْمَ يَبْعَثُهُمُ اللّٰهُ جَمِيْعًا فَيُنَبِّئُهُمْ بِمَا عَمِلُوْا ۚ اَحْصٰىهُ اللّٰهُ وَنَسُوْهُ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ شَهِيْدٌ ⑥

६) जुन दिन अल्लाहले उनीहरूलाई उठाउनेछ फेरि जुन काम उनीहरूले गर्दथे त्यसबाट उनीहरूलाई अवगत गराउनेछ । अल्लाहले ती सबैलाई गिनि राखको छ जुन यिनीहरूले बिर्सिसकेछन् र अल्लाह प्रत्येक कुरा जान्दछ ।

أَلَمْ تَرَ أَنَّ اللَّهَ يَعْلَمُ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۖ مَا يَكُونُ مِن نَّجْوَىٰ ثَلَاثَةٍ إِلَّا هُوَ رَابِعُهُمْ وَلَا خَمْسَةٍ إِلَّا هُوَ سَادِسُهُمْ وَلَا أَدْنَىٰ مِن ذَٰلِكَ وَلَا أَكْثَرَ إِلَّا هُوَ مَعَهُمْ أَيْنَ مَا كَانُوا ۖ ثُمَّ يُنَبِّئُهُم بِمَا عَمِلُوا يَوْمَ الْقِيَامَةِ ۚ إِنَّ اللَّهَ بِكُلِّ شَيْءٍ عَلِيمٌ ﴿٧﴾

७) के तिमीलाई थाहा छैन कि जे-जति आकाशहरूमा छ र जे-जति धरतीमा छ, अल्लाहलाई सबै थाहा छ । कुनै पनि तीनजना मानिसहरूको गुप्त वार्ता यस्तो हुँदैन जसमा चौथो अल्लाह नहोस् र न पाँचजना मानिसहरूको हुन्छ, जसमा छैठौं त्यो नहोस् । न यसभन्दा कमको न यसभन्दा बढिको किन्तु त्यो उनीहरूको साथमा हुन्छ, तिनीहरू जहाँ भएपनि, अनि जे-जति पनि उनीहरूले गरेका होलान्, कयामतको दिन उसले उनीहरूलाई उनको कार्यबाट अवगत गराइहाल्नेछ । निश्चय नै अल्लाहलाई हरेक कुराको ज्ञान छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ نُهُوا عَنِ النَّجْوَىٰ ثُمَّ يَعُودُونَ لِمَا نُهُوا عَنْهُ وَيَتَنَاجَوْنَ بِالْإِثْمِ وَالْعُدْوَانِ وَمَعْصِيَتِ الرَّسُولِ وَإِذَا جَاءُوكَ حَيَّوْكَ بِمَا لَمْ يُحَيِّكَ بِهِ اللَّهُ وَيَقُولُونَ فِي أَنفُسِهِمْ لَوْلَا يُعَذِّبُنَا اللَّهُ بِمَا نَقُولُ ۚ حَسْبُهُمْ جَهَنَّمُ يَصْلَوْنَهَا ۖ فَبِئْسَ الْمَصِيرُ ﴿٨﴾

८) के तिमीले उनीहरूलाई देखेनौ ? जसलाई कानेखुसी गर्नबाट मनाही गरिएको थियो । उनी फेरि पनि त्यो मनाही गरिएको काम गर्न थाले र परस्परमा पापको, अत्याचारको र रसूलको अवज्ञाको कानेखुसी गर्दछन् र जब तिम्रो नजिकमा आउँदछन्, त तिमीलाई ती शब्दमा सलाम गर्दछन् । जुन शब्द अल्लाहले तिम्रो अभिवादनको लागि भनेन, र आफ्नो मनमा भन्दछन् कि जे-जति हामीले भन्दछौं, त्यसमा अल्लाहले हामीलाई सजाय किन दिँदैन ? उनीहरूको निम्ति नर्क नै प्रयाप्त

सजाय हो । जसमा उनीहरू प्रविष्ट हुनेछन् । त्यो त साह्रै नराम्रो ठाउँ हो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا تَنَٰجَيْتُمْ فَلَا تَتَنَٰجَوْا۟ بِٱلْإِثْمِ وَٱلْعُدْوَٰنِ وَمَعْصِيَتِ ٱلرَّسُولِ وَتَنَٰجَوْا۟ بِٱلْبِرِّ وَٱلتَّقْوَىٰ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ٱلَّذِىٓ إِلَيْهِ تُحْشَرُونَ ۝٩

९) हे मोमिनहरू ! जब तिमी आपसमा कानेखुसी गर्दछौ त यी कानेखुसीहरू गुनाह र अतिक्रमण र रसूलको अवज्ञाको लागी नहोऊन् । बरु नेकी र सहनशीलताको विषयमा आपसमा एकान्त वार्ता गर र त्यस अल्लाहसित डर मानी राख जसको नजिक तिमी एकत्रित हुनेछौ ।

إِنَّمَا ٱلنَّجْوَىٰ مِنَ ٱلشَّيْطَٰنِ لِيَحْزُنَ ٱلَّذِينَ ءَامَنُوا۟ وَلَيْسَ بِضَآرِّهِمْ شَيْـًٔا إِلَّا بِإِذْنِ ٱللَّهِ ۚ وَعَلَى ٱللَّهِ فَلْيَتَوَكَّلِ ٱلْمُؤْمِنُونَ ۝١٠

१०) नराम्रा कानेखुसीहरू त शैतानको काम हो । ताकि यसबाट मोमिनहरू दुःखी होऊन्, यद्यपि अल्लाहको आदेश बिना उसले उनीहरूलाई केही हानि पुऱ्याउन सक्दैन । र मोमिनहरूले अल्लाहमाथि नै भरोसा गर्न उचित हो ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا قِيلَ لَكُمْ تَفَسَّحُوا۟ فِى ٱلْمَجَٰلِسِ فَٱفْسَحُوا۟ يَفْسَحِ ٱللَّهُ لَكُمْ ۖ وَإِذَا قِيلَ ٱنشُزُوا۟ فَٱنشُزُوا۟ يَرْفَعِ ٱللَّهُ ٱلَّذِينَ ءَامَنُوا۟ مِنكُمْ وَٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ دَرَجَٰتٍ ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ۝١١

११) मोमिनहरू ! जब तिमीहरूलाई भनिन्छ कि सभामा ठाउँ फराकिलो पार त फराकिलो गरी बस । अल्लाहले तिमीलाई फराकिलोपना प्रदान गर्नेछ र जब भनिन्छ कि उभिहाल्नु त उभिहाल । तिमीहरूमध्ये जसले ईमान ल्याएका छन् र जसलाई ज्ञान प्रदान गरिएको छ, अल्लाहले उनीहरूको दर्जा उच्च गर्नेछ, र अल्लाह तिम्रो सम्पूर्ण कामहरूलाई जान्दछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا نَاجَيْتُمُ الرَّسُولَ فَقَدِّمُوا بَيْنَ يَدَيْ نَجْوَاكُمْ صَدَقَةً ۚ ذَٰلِكَ خَيْرٌ لَّكُمْ وَأَطْهَرُ ۚ فَإِن لَّمْ تَجِدُوا فَإِنَّ اللَّهَ غَفُورٌ رَّحِيمٌ ﴿١٢﴾

१२) हे मोमिनहरू ! जब तिमीले पैगम्बरको कानमा कुनै कुरा भन्न चाहन्छौ त त्यस कुरालाई भन्नुभन्दा पहिला केही दान गर्ने गर । यो तिम्रो निम्ति धेरै राम्रो र पवित्रताको कुरा हो र यदि दानको सामर्थ्य छैन भने त अल्लाह क्षमाशील र कृपालु छ ।

أَأَشْفَقْتُمْ أَن تُقَدِّمُوا بَيْنَ يَدَيْ نَجْوَاكُمْ صَدَقَاتٍ ۚ فَإِذْ لَمْ تَفْعَلُوا وَتَابَ اللَّهُ عَلَيْكُمْ فَأَقِيمُوا الصَّلَاةَ وَآتُوا الزَّكَاةَ وَأَطِيعُوا اللَّهَ وَرَسُولَهُ ۚ وَاللَّهُ خَبِيرٌ بِمَا تَعْمَلُونَ ﴿١٣﴾

१३) के तिमी आफ्नो गुप्तवार्ताभन्दा पहिला दान दिनुबाट तर्सिहाल्यौ ? अनि जब तिमीले यस्तो गरेनौ र अल्लाहले तिमीलाई क्षमा गरिदियो त नमाज पढ्ने गर र ज़कात (दान) दिँदै गर र अल्लाह र उसको रसूलको आज्ञापालन गर्ने गर । र जे-जति तिमीले गर्दछौ, अल्लाहलाई त्यो सबै थाहा छ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ تَوَلَّوْا قَوْمًا غَضِبَ اللَّهُ عَلَيْهِم مَّا هُم مِّنكُمْ وَلَا مِنْهُمْ وَيَحْلِفُونَ عَلَى الْكَذِبِ وَهُمْ يَعْلَمُونَ ﴿١٤﴾

१४) के तिमीले ती मानिसहरूलाई देखेनौ ? जसले यस्ता मानिसहरूसित मित्रता गरे जसमाथि अल्लाहको प्रकोप भएको छ ? ती कपटीहरू न तिमी मध्येका हुन र न उनीहरू मध्येका, र उनीहरू जानी-जानी झूठो कुराको कसम खान्छन् ।

أَعَدَّ اللَّهُ لَهُمْ عَذَابًا شَدِيدًا ۖ إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ﴿١٥﴾

१५) अल्लाहले उनीहरूको निम्ति कठोर यातना तयार गरिसकेको छ । निश्चय नै उनीहरूले जे गरिराखेका छन् त्यो नराम्रो हो ।

اتَّخَذُوا أَيْمَانَهُمْ جُنَّةً فَصَدُّوا عَن سَبِيلِ اللَّهِ فَلَهُمْ عَذَابٌ مُّهِينٌ ﴿١٦﴾

१६) उनीहरूले आफ्ना कसमहरूलाई सुरक्षा कवच बनाइराखेका छन् ।

अतः उनीहरू अल्लाहको मार्गबाट मानिसहरूलाई रोक्दछन्। तसर्थ उनीहरूका निमित्त तिरस्कारपूर्ण यातना छ।

१७) अल्लाह को यातनाबाट बचाउनको निम्ति न उनीहरूको धन सम्पत्ति उनीहरूको काम आउनेछ र न उनीहरूका सन्तान। उनीहरू नर्कबासी हुन्। त्यसैमा उनीहरू सधै रहनेछन्।

لَنْ تُغْنِيَ عَنْهُمْ أَمْوَالُهُمْ وَلَآ أَوْلَادُهُم مِّنَ اللَّهِ شَيْـًٔا ۚ أُولَٰٓئِكَ أَصْحَٰبُ النَّارِ ۖ هُمْ فِيهَا خَٰلِدُونَ ﴿١٧﴾

१८) जुन दिन अल्लाहले ती सबैलाई जीवित पारी उठाउनेछ त उनीहरूले उसको सामु पनि यस्तै प्रकारले कसम खानेछन्, जुन प्रकारले तिम्रो अगाडि कसम खान्छन् र ठान्छन् कि उनीहरू पनि कुनै आधारमा छन्। हेर, निश्चय नै तिनीहरू नै झूठा हुन्।

يَوْمَ يَبْعَثُهُمُ اللَّهُ جَمِيعًا فَيَحْلِفُونَ لَهُۥ كَمَا يَحْلِفُونَ لَكُمْ ۖ وَيَحْسَبُونَ أَنَّهُمْ عَلَىٰ شَىْءٍ ۚ أَلَآ إِنَّهُمْ هُمُ الْكَٰذِبُونَ ﴿١٨﴾

१९) शैतानले उनीहरूलाई नियन्त्रणमा लिइसकेको छ। अतः उसले अल्लाहको स्मरणलाई उनीहरूबाट बिर्साइसकेको छ। यिनीहरू शैतानको समूह हुन् यसमा शंका छैन कि शैतानका समूह नै घाटामा पर्नेवाला छ।

اسْتَحْوَذَ عَلَيْهِمُ الشَّيْطَٰنُ فَأَنسَىٰهُمْ ذِكْرَ اللَّهِ ۚ أُولَٰٓئِكَ حِزْبُ الشَّيْطَٰنِ ۚ أَلَآ إِنَّ حِزْبَ الشَّيْطَٰنِ هُمُ الْخَٰسِرُونَ ﴿١٩﴾

२०) निःसंदेह जसले अल्लाह र उसको रसूलको विरोध गर्दछन्, उनीहरू सबभन्दा बढी अपमानितहरू मध्ये हुन्।

إِنَّ الَّذِينَ يُحَآدُّونَ اللَّهَ وَرَسُولَهُۥٓ أُولَٰٓئِكَ فِى الْأَذَلِّينَ ﴿٢٠﴾

كَتَبَ اللّٰهُ لَاَغْلِبَنَّ اَنَا وَرُسُلِيْ ۭ اِنَّ اللّٰهَ قَوِيٌّ عَزِيْزٌ ﴿٢١﴾

२१) अल्लाहले लेखिसकेको छ कि निःसंदेह म र मेरा रसूल नै विजयी रहनेछौं । निःसन्देह अल्लाह शक्तिमान र अधिपत्यशाली छ ।

لَا تَجِدُ قَوْمًا يُّؤْمِنُوْنَ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ يُوَاۗدُّوْنَ مَنْ حَاۗدَّ اللّٰهَ وَرَسُوْلَهٗ وَلَوْ كَانُوْٓا اٰبَاۗءَهُمْ اَوْ اَبْنَاۗءَهُمْ اَوْ اِخْوَانَهُمْ اَوْ عَشِيْرَتَهُمْ ۭ اُولٰۗىِٕكَ كَتَبَ فِيْ قُلُوْبِهِمُ الْاِيْمَانَ وَاَيَّدَهُمْ بِرُوْحٍ مِّنْهُ ۭ وَيُدْخِلُهُمْ جَنّٰتٍ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ خٰلِدِيْنَ فِيْهَا ۭ رَضِيَ اللّٰهُ عَنْهُمْ وَرَضُوْا عَنْهُ ۭ اُولٰۗىِٕكَ حِزْبُ اللّٰهِ ۭ اَلَآ اِنَّ حِزْبَ اللّٰهِ هُمُ الْمُفْلِحُوْنَ ﴿٢٢﴾

२२) जसले अल्लाह र कयामतका दिनमाथि आस्था राख्दछन्, उनीहरूलाई अल्लाह र उसको रसूलका दुश्मनहरूसित मित्रता गरेको तपाईले पाउनु हुन्न । चाहे उनीहरू तिनीहरूका बाबु वा छोरा वा भाइ वा उनको खलककै मानिसहरू किन नहोऊन् । यिनै ती मानिसहरू हुन्, जसको हृदयमा अल्लाहले ईमान लेखिदिएको छ र अदृश्य अनुकम्पाले उनीहरूको सहायता गरेको छ र उसले उनीहरूलाई त्यस्ता स्वर्गहरूमा जसमुनि नहरहरू बगिराखेका छन्, प्रवेश गराउने छ, यिनी सधैं त्यसमा रहनेछन् । अल्लाह उनीहरूसित, र उनीहरू अल्लाहसित खुशी छन् । यही समूह अल्लाहको जमाअत हो । र सुनिराख कि अल्लाहकै जमाअत नै सफल समूह हुनेछन् ।



# सूरतुल् हश्र-५९




सूरतुल् हश्र, मदनी हो, यसमा २४ आयतहरू र ३ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

سَبَّحَ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

१) जे जति आकाशहरूमा छन् र जे जति धरतीमा छन्, सबैले अल्लाहको पवित्रताको वर्णन गर्दछन् र ऊ अधिपत्यशाली तत्वदर्शी छ ।

هُوَ الَّذِيْٓ اَخْرَجَ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ مِنْ دِيَارِهِمْ لِاَوَّلِ الْحَشْرِ ۭ مَا ظَنَنْتُمْ اَنْ يَّخْرُجُوْا وَظَنُّوْٓا اَنَّهُمْ مَّانِعَتُهُمْ حُصُوْنُهُمْ مِّنَ اللّٰهِ فَاَتٰىهُمُ اللّٰهُ مِنْ حَيْثُ لَمْ يَحْتَسِبُوْا ۤ وَقَذَفَ فِيْ قُلُوْبِهِمُ الرُّعْبَ يُخْرِبُوْنَ بُيُوْتَهُمْ بِاَيْدِيْهِمْ وَاَيْدِي الْمُؤْمِنِيْنَ ۤ فَاعْتَبِرُوْا يٰٓاُولِي الْاَبْصَارِ ②

२) उहि हो, जसले किताबवालाहरू मध्येबाट ती मानिसहरूलाई जसले इन्कार गरे उनीहरूको घरबाट पहिलो भेलाद्वार नै बाहिर निकालिदियो । तिमीलाई अनुमान पनि थिएन कि उनीहरू निस्कने छन् र उनीहरूले ठान्थे कि उनका गढीहरू अल्लाहबाट उनीहरूलाई बचाइहाल्ने छन् तर अल्लाहको क्रोध उनीहरूलाई यस्तो ठाउँबाट आइलाग्यो जसको उनीहरूलाई कल्पना पनि थिएन र उसले उनीहरूका हृदयमा अल्लाहको आतंक फैलाइदियो कि उनीहरू आफ्ना घरहरूलाई स्वयम् आफ्नै हातले र मोमिनहरूको हातबाट उजार्न थाले । अतः हे आँखाले देख्नेवालाहरू ! शिक्षा ग्रहण गर ।

وَلَوْلَآ اَنْ كَتَبَ اللّٰهُ عَلَيْهِمُ الْجَلَاۗءَ لَعَذَّبَهُمْ فِي الدُّنْيَا ۭ وَلَهُمْ فِي الْاٰخِرَةِ عَذَابُ النَّارِ ③

३) र यदि अल्लाहले उनीहरूको निम्ति देश निकाला नलेखिदिएको भए संसार

मै पनि उसले उनीहरूलाई अवश्य यातना दिन्थ्यो र परलोकमा त उनीहरूको निम्ति आगोको यातना छँदैछ ।

४) यो यसकारण कि उनीहरूले अल्लाह र उसको रसूलको बिरोध गरे । र जो कोहिले पनि अल्लाहको विरोध गर्नेछ त निश्चय नै अल्लाहको यातना साह्रै कठोर छ ।

ذٰلِكَ بِأَنَّهُمْ شَآقُّوا اللّٰهَ وَرَسُوْلَهٗ ۚ وَمَنْ يُّشَآقِّ اللّٰهَ فَإِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ④

५) (मोमिनहरू !) खजूरको वृक्ष जुन तिमीले काटिहाल्यौ वा जतिलाई आफ्नो जराहरूमा उभिरहन दियौ, यो सबै अल्लाहको आदेशबाट थियो र उद्देश्य यो थियो कि उसले अवज्ञाकारीहरूलाई अपमानित गरोस् ।

مَا قَطَعْتُمْ مِّنْ لِّيْنَةٍ أَوْ تَرَكْتُمُوْهَا قَآئِمَةً عَلٰٓى أُصُوْلِهَا فَبِإِذْنِ اللّٰهِ وَلِيُخْزِيَ الْفٰسِقِيْنَ ⑤

६) र उनको जुन (माल) अल्लाहले आफ्नो पैगम्बरलाई उनीहरूसित युद्ध बिना दिलाएको छ, (त्यसमा तिम्रो कुनै हक़ छैन,) किनभने यसको निम्ति तिमीले न घोडाहरू दगुरायौ न ऊँट । तर अल्लाहले आफ्नो रसूलहरूलाई जसमाथि चाहन्छ, अधिपत्य प्रदान गरिदिन्छ । अल्लाहलाई त प्रत्येक कुराको सामर्थ्य छ ।

وَمَآ أَفَآءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْهُمْ فَمَآ أَوْجَفْتُمْ عَلَيْهِ مِنْ خَيْلٍ وَّلَا رِكَابٍ وَّلٰكِنَّ اللّٰهَ يُسَلِّطُ رُسُلَهٗ عَلٰى مَنْ يَّشَآءُ ۚ وَاللّٰهُ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ⑥

७) जुन माल सम्पत्ति अल्लाहले आफ्नो पैगम्बरलाई कुनै लडाई वा युद्ध बेगर नगरबासीहरूबाट दिलाएको छ । त्यो अल्लाह र पैगम्बर र पैगम्बरका नजिकका नातावालाहरू

مَآ أَفَآءَ اللّٰهُ عَلٰى رَسُوْلِهٖ مِنْ أَهْلِ الْقُرٰى فَلِلّٰهِ وَلِلرَّسُوْلِ وَلِذِي الْقُرْبٰى وَالْيَتٰمٰى وَالْمَسٰكِيْنِ وَابْنِ السَّبِيْلِ كَيْ لَا يَكُوْنَ دُوْلَةًۢ بَيْنَ الْأَغْنِيَآءِ مِنْكُمْ ۚ وَمَآ اٰتٰىكُمُ الرَّسُوْلُ فَخُذُوْهُ ۚ وَمَا نَهٰىكُمْ عَنْهُ فَانْتَهُوْا ۚ وَاتَّقُوا اللّٰهَ ۗ إِنَّ اللّٰهَ شَدِيْدُ الْعِقَابِ ⑦

र अनाथहरू र निमुखाहरू र बटुवाहरूको निम्ति हो, ताकि तिमीहरूमध्ये जो धनवान छन्, उनीहरू कै हातमा घुम्दै नरहिरहोस्, जे-जति कुरा तिमीलाई पैगम्बरले दिन्छन्, त्यो लिइहाल र जुन कुरोबाट मनाही गर्छन्, त्यसबाट पन्छिनु र अल्लाहसित डर्ने गर, निःसन्देह अल्लाह कष्टप्रद सजाय दिनेवाला छ ।

لِلْفُقَرَاءِ الْمُهَاجِرِينَ الَّذِينَ أُخْرِجُوا مِن دِيَارِهِمْ
وَأَمْوَالِهِمْ يَبْتَغُونَ فَضْلًا مِّنَ اللَّهِ وَرِضْوَانًا
وَيَنصُرُونَ اللَّهَ وَرَسُولَهُ ۚ أُولَٰئِكَ هُمُ الصَّادِقُونَ ﴿٨﴾

८) र ती गरीब आफ्नो घरबार छोड्ने वालाहरूका (मुहाजिर) निम्ति पनि जसलाई आफ्ना घरहरू र सम्पत्तिहरूबाट निकाला गरिदिइएको छ । तिनीहरू अल्लाहको अनुकम्पा र उसको प्रसन्नताको इच्छुक छन् र अल्लाह तथा उसको रसूलको मद्दत गर्छन् । यी मानिसहरू नै साँचै ईमानवाला छन् ।

وَالَّذِينَ تَبَوَّءُوا الدَّارَ وَالْإِيمَانَ مِن قَبْلِهِمْ يُحِبُّونَ
مَنْ هَاجَرَ إِلَيْهِمْ وَلَا يَجِدُونَ فِي صُدُورِهِمْ
حَاجَةً مِّمَّا أُوتُوا وَيُؤْثِرُونَ عَلَىٰ أَنفُسِهِمْ
وَلَوْ كَانَ بِهِمْ خَصَاصَةٌ ۚ وَمَن يُوقَ شُحَّ
نَفْسِهِ فَأُولَٰئِكَ هُمُ الْمُفْلِحُونَ ﴿٩﴾

९) र उनीहरूको लागि जसले "मुहाजिरहरू" भन्दा पहिला मदीना मा बसिराखे र ईमानमा उनीहरूभन्दा पहिला स्थान बनाएका छन् । र जो हिजरत गरेर आउँनेहरू सित प्रेम गर्दछन् र जे जति आप्रवासीहरूलाई दिइन्छ, त्यसबाट आफ्नो हृदयमा केही छट्पटी पाउँदैनन्, बरु उनलाई आफूहरूभन्दा बढि प्राथमिकता दिन्छन्, चाहे उनीहरूलाई स्वयं त्यसको आवश्यकता किन नहोस्

र जो व्यक्ति आफ्नो मनको लोभ र कञ्जूसीबाट बचाइयो यस्ता मानिसहरू नै सफल छन् ।

وَالَّذِينَ جَاءُوا مِنْ بَعْدِهِمْ يَقُولُونَ رَبَّنَا اغْفِرْ لَنَا وَلِإِخْوَانِنَا الَّذِينَ سَبَقُونَا بِالْإِيمَانِ وَلَا تَجْعَلْ فِي قُلُوبِنَا غِلًّا لِلَّذِينَ آمَنُوا رَبَّنَا إِنَّكَ رَءُوفٌ رَحِيمٌ ﴿١٠﴾

१०) र यस सम्पत्तिमा उनको पनि (भाग छ) जो उनका पछि आएछन् । उनीहरूले भन्नेछन् कि हे हाम्रो पालनकर्ता ! हामीलाई क्षमा गरिदेऊ र हाम्रा ती दाजुभाइहरूलाई पनि जो हामीभन्दा पहिला ईमान ल्याए, र हाम्रा हृदयमा ईमानवालाहरूको निम्ति कुनै विद्धेश र शत्रुता नराख । हे हाम्रा पालनकर्ता ! तिमी निश्चय नै बडो करुणामय अत्यन्त दयावान छौ ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ نَافَقُوا يَقُولُونَ لِإِخْوَانِهِمُ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ لَئِنْ أُخْرِجْتُمْ لَنَخْرُجَنَّ مَعَكُمْ وَلَا نُطِيعُ فِيكُمْ أَحَدًا أَبَدًا وَإِنْ قُوتِلْتُمْ لَنَنْصُرَنَّكُمْ وَاللَّهُ يَشْهَدُ إِنَّهُمْ لَكَاذِبُونَ ﴿١١﴾

११) के तिमीले ती मुनाफिकहरू (कपटी) लाई देखेनौ, जसले आफ्ना काफिर भाइहरूसित जो किताबवाला छन् भन्ने गर्दछन्, कि यदि तिमीलाई देश निकाला गरियो भने, निश्चय नै हामी पनि तिम्रो साथमा निस्केर जानेछौं, र तिम्रो बारेमा कहिल्यै कसैको भनाई मान्ने छैनौं, र यदि तिमीसँग लडाई भयो भने तिम्रो सहायता गर्नेछौं, तर अल्लाह साक्षी छ, कि यिनीहरू झूठा छन् ।

لَئِنْ أُخْرِجُوا لَا يَخْرُجُونَ مَعَهُمْ وَلَئِنْ قُوتِلُوا لَا يَنْصُرُونَهُمْ وَلَئِنْ نَصَرُوهُمْ لَيُوَلُّنَّ الْأَدْبَارَ ثُمَّ لَا يُنْصَرُونَ ﴿١٢﴾

१२) यदि उनीहरू निकालिए भने यिनीहरू उनको साथमा निस्कने छैनन् र यदि उनीहरूसँग युद्ध भयो भने त उनको सहायता गर्ने छैनन् र यदि

सहायता गर्न आउँछन् भने पिठ्यू फर्काइ भागिहाल्ने छन्, अनि उनीहरूलाई कतैबाट पनि सहायता प्राप्त हुने छैन ।

لَاَنۡتُمۡ اَشَدُّ رَهۡبَةً فِىۡ صُدُوۡرِهِمۡ مِّنَ اللّٰهِ‌ؕ ذٰلِكَ بِاَنَّهُمۡ قَوۡمٌ لَّا يَفۡقَهُوۡنَ ﴿۱۳﴾

१३) (मुसलमानहरू !) तिम्रो भय ती मानिसहरूको हृदयमा अल्लाहभन्दा पनि बढी छ, यो यस कारण छ कि यिनीहरूले बुझ्दैनन् ।

لَا يُقَاتِلُوۡنَكُمۡ جَمِيۡعًا اِلَّا فِىۡ قُرًى مُّحَصَّنَةٍ اَوۡ مِنۡ وَّرَآءِ جُدُرٍ‌ؕ بَاۡسُهُمۡ بَيۡنَهُمۡ شَدِيۡدٌ‌ؕ تَحۡسَبُهُمۡ جَمِيۡعًا وَّقُلُوۡبُهُمۡ شَتّٰى‌ؕ ذٰلِكَ بِاَنَّهُمۡ قَوۡمٌ لَّا يَعۡقِلُوۡنَ‌ۚ ﴿۱۴﴾

१४) यी सबै मिलेर पनि तिमीसित आमुन्ने-सामुन्ने लड्न सक्दैनन् । तर बस्तीहरूका गढहरूमा शरण लिएर वा पर्खालहरूको पछाडि (लुकेर) रहुन् । उनको आपसमा नै ठूलो लडाई छ । यद्यपि तिमीले यिनीहरूलाई संगठित ठान्दछौ तर उनका हृदय फाटेका छन् । यो यसकारण कि उनीहरू बुद्धिहीन छन् ।

كَمَثَلِ الَّذِيۡنَ مِنۡ قَبۡلِهِمۡ قَرِيۡبًا‌ ذَاقُوۡا وَبَالَ اَمۡرِهِمۡ‌ۚ وَلَهُمۡ عَذَابٌ اَلِيۡمٌ‌ۚ ﴿۱۵﴾

१५) उनीहरूको अवस्था ती मानिसहरूको जस्तो छ, जुन उनीभन्दा केही पहिला आफ्ना कर्महरूको यातनाको स्वाद चाखिसकेका छन् र अहिले उनीहरूको निम्ति कष्टदायक यातना तयार छ ।

كَمَثَلِ الشَّيۡطٰنِ اِذۡ قَالَ لِلۡاِنۡسَانِ اكۡفُرۡ‌ۚ فَلَمَّا كَفَرَ قَالَ اِنِّىۡ بَرِىۡٓءٌ مِّنۡكَ اِنِّىۡۤ اَخَافُ اللّٰهَ رَبَّ الۡعٰلَمِيۡنَ ﴿۱۶﴾

१६) (मुनाफिकहरूको) उदाहरण शैतानको जस्तो छ, उसले मानिस सँग भन्यो कुफ्र गर । त जब त्यो काफिर भइहाल्यो तब भन्नथाल्यो कि मलाई तिमीसित कुनै सरोकार

छैन। मलाई त सारा संसारको पालनकर्तासित डर लाग्छ।

فَكَانَ عَاقِبَتَهُمَآ أَنَّهُمَا فِي النَّارِ خَالِدَيْنِ فِيهَا ۚ وَذَٰلِكَ جَزَٰٓؤُا الظَّٰلِمِينَ ﴿١٧﴾

१७) तसर्थ दुवैको परिणाम यो भयो कि दुवै नर्कमा गए। सधैं त्यसमा रहनेछन् र अन्यायीहरूको यही दण्ड हो।

يَٰٓأَيُّهَا الَّذِينَ ءَامَنُوا اتَّقُوا اللَّهَ وَلْتَنظُرْ نَفْسٌ مَّا قَدَّمَتْ لِغَدٍ ۖ وَاتَّقُوا اللَّهَ ۚ إِنَّ اللَّهَ خَبِيرٌۢ بِمَا تَعْمَلُونَ ﴿١٨﴾

१८) हे ईमानवालाहरू ! अल्लाहसित डर र प्रत्येक व्यक्तिले हेर्नुपर्छ कि उसले भोलि क़यामतको दिनको निम्ति के कस्तो कर्म पठाएको छ र सधैं अल्लाहसित डर मानी राख निःसन्देह अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापबाट अवगत छ।

وَلَا تَكُونُوا كَالَّذِينَ نَسُوا اللَّهَ فَأَنسَىٰهُمْ أَنفُسَهُمْ ۚ أُولَٰٓئِكَ هُمُ الْفَٰسِقُونَ ﴿١٩﴾

१९) र तिमी ती मानिसहरू जस्तो नहुनु, जसले अल्लाहलाई बिर्सिदिए, तब अल्लाहले उनीहरूलाई यस्तो गरिदियो कि स्वयं आफूलाई नै बिर्सिहाले। यिनीहरू अवज्ञाकारी हुन्।

لَا يَسْتَوِيٓ أَصْحَٰبُ النَّارِ وَأَصْحَٰبُ الْجَنَّةِ ۚ أَصْحَٰبُ الْجَنَّةِ هُمُ الْفَآئِزُونَ ﴿٢٠﴾

२०) नर्कवाला र स्वर्गवालाहरू समान छैनन्। स्वर्गवाला त सफलता प्राप्त गर्नेवाला हुन् (र नर्कवालाहरू असफल हुन)।

لَوْ أَنزَلْنَا هَٰذَا الْقُرْءَانَ عَلَىٰ جَبَلٍ لَّرَأَيْتَهُۥ خَٰشِعًا مُّتَصَدِّعًا مِّنْ خَشْيَةِ اللَّهِ ۚ وَتِلْكَ الْأَمْثَٰلُ نَضْرِبُهَا لِلنَّاسِ لَعَلَّهُمْ يَتَفَكَّرُونَ ﴿٢١﴾

२१) यदि हामीले यस कुरआनलाई कुनै पहाडमाथि अवतरित गरेको भए, तिमीले त्यसलाई अल्लाहको भयले चूरा-चूरा भइराखेको देख्नेथ्यौ र यी उदाहरणहरू हामीले मानिसहरूका निम्ति वर्णन गर्दछौं ताकि उनीहरूले गम्भीरतापूर्वक विचार गरुन्।

هُوَ اللّٰهُ الَّذِىْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ عٰلِمُ الْغَيْبِ وَالشَّهَادَةِ ۚ هُوَ الرَّحْمٰنُ الرَّحِيْمُ ﴿٢٢﴾

२२) उही अल्लाह हो, जस बाहेक अरु कोही सत्य पूज्य छैन, अदृश्य र प्रकटको ज्ञाता, बडो कृपाशील, अत्यन्त दयावान छ ।

هُوَ اللّٰهُ الَّذِىْ لَآ اِلٰهَ اِلَّا هُوَ ۚ اَلْمَلِكُ الْقُدُّوْسُ السَّلٰمُ الْمُؤْمِنُ الْمُهَيْمِنُ الْعَزِيْزُ الْجَبَّارُ الْمُتَكَبِّرُ ۗ سُبْحٰنَ اللّٰهِ عَمَّا يُشْرِكُوْنَ ﴿٢٣﴾

२३) त्यही अल्लाह हो, जस बाहेक कोही सत्य पूजाको योग्य छैन । त्यो सम्राट हो, अत्यन्त पवित्र सबै दुर्गुणबाट मुक्त, शान्तिदाता, संरक्षक, अधिपत्यवाला र शक्तिशाली र महानतायुक्त पवित्र छ अल्लाह, त्यस शीर्कबाट जुन उनीहरूले गर्दछन् ।

هُوَ اللّٰهُ الْخَالِقُ الْبَارِئُ الْمُصَوِّرُ لَهُ الْاَسْمَآءُ الْحُسْنٰى ۗ يُسَبِّحُ لَهٗ مَا فِى السَّمٰوٰتِ وَالْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ﴿٢٤﴾

२४) उही अल्लाह हो, जो सृष्टिकर्ता र अस्तित्व दाता हो, रूप दिनेवाला हो उसैका सबै राम्रा नामहरू हुन् । जुनसुकै कुरा चाहे त्यो आकाशहरू वा धरतीमा छ, उसैको गुणगान गरिराखेको छ । र ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।



# सूरतुल् मुम्तहिनः -६०



सूरतुल् मुम्तहिना मदनी हो, यसमा १३ आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

१) हे मोमिनहरू ! मेरो र आफ्नो शत्रुहरूलाई आफ्नो मित्र नबनाऊ, तिमी त मित्रताबाट उनीहरू कहाँ सन्देश पठाउँछौ र तिनीहरू त्यस सत्यलाई जुन तिम्रो नजिक आई सकेको छ इन्कार गर्दछन्, पैगम्बर र तिमीलाई यसकारण मात्र निर्वासन गर्दछन् कि तिमी आफ्नो पालनकर्ता माथि ईमान राख्दछौ । यदि तिमी मेरो मार्गमा धर्मयुद्धको लागि र मेरो प्रसन्नताको खोजीमा निस्कन्छौ त तिमी उनीनिर मित्रताको सन्देश गोप्य रूपले पठाउँछौ र मलाई पूर्ण ज्ञात छ । जो तिमीले मबाट लुकाएको छौ र त्यो पनि जसलाई तिमी खुल्ला रूपले गरेका हौ । तिमीहरूमध्ये जोकोही पनि यस्तो काम गर्नेछ । त्यो निःसन्देह सोझो मार्गबाट विचलित भइहाल्छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَتَّخِذُواْ عَدُوِّي وَعَدُوَّكُمۡ أَوۡلِيَآءَ تُلۡقُونَ إِلَيۡهِم بِٱلۡمَوَدَّةِ وَقَدۡ كَفَرُواْ بِمَا جَآءَكُم مِّنَ ٱلۡحَقِّ يُخۡرِجُونَ ٱلرَّسُولَ وَإِيَّاكُمۡ أَن تُؤۡمِنُواْ بِٱللَّهِ رَبِّكُمۡ إِن كُنتُمۡ خَرَجۡتُمۡ جِهَٰدٗا فِي سَبِيلِي وَٱبۡتِغَآءَ مَرۡضَاتِيۚ تُسِرُّونَ إِلَيۡهِم بِٱلۡمَوَدَّةِ وَأَنَا۠ أَعۡلَمُ بِمَآ أَخۡفَيۡتُمۡ وَمَآ أَعۡلَنتُمۡۚ وَمَن يَفۡعَلۡهُ مِنكُمۡ فَقَدۡ ضَلَّ سَوَآءَ ٱلسَّبِيلِ ١

२) यदि यी नास्तिक (काफिरहरू), तिमीमाथि नियन्त्रण पाउँछन् भने तिम्रा शत्रु भइहाल्छन् र दुःख पुऱ्याउनका निम्ति तिमीमाथि

إِن يَثۡقَفُوكُمۡ يَكُونُواْ لَكُمۡ أَعۡدَآءٗ وَيَبۡسُطُوٓاْ إِلَيۡكُمۡ أَيۡدِيَهُمۡ وَأَلۡسِنَتَهُم بِٱلسُّوٓءِ وَوَدُّواْ لَوۡ تَكۡفُرُونَ ٢

हातपात गर्नेछन्, र अपशब्द पनि भन्ने गर्छन्, र चाहन्छन् कि तिमी कुनै तरीकाले काफिर भइहाल ।

لَن تَنفَعَكُمْ أَرْحَامُكُمْ وَلَا أَوْلَادُكُمْ ۚ يَوْمَ الْقِيَامَةِ
يَفْصِلُ بَيْنَكُمْ ۚ وَاللَّهُ بِمَا تَعْمَلُونَ بَصِيرٌ ﴿٣﴾

३) कयामतका दिन न तिम्रा सम्बन्धीहरू, र न सन्तानहरू कुनै काम आउने छन् । त्यस दिन अल्लाहले तिमीहरूबीच न्याय गर्नेछ र जे-जति तिमीले गर्दछौ, अल्लाहले त्यसलाई देख्दछ ।

قَدْ كَانَتْ لَكُمْ أُسْوَةٌ حَسَنَةٌ فِي إِبْرَاهِيمَ وَالَّذِينَ مَعَهُ
إِذْ قَالُوا لِقَوْمِهِمْ إِنَّا بُرَآءُ مِنكُمْ وَمِمَّا تَعْبُدُونَ
مِن دُونِ اللَّهِ كَفَرْنَا بِكُمْ وَبَدَا بَيْنَنَا وَبَيْنَكُمُ الْعَدَاوَةُ
وَالْبَغْضَاءُ أَبَدًا حَتَّىٰ تُؤْمِنُوا بِاللَّهِ وَحْدَهُ إِلَّا قَوْلَ
إِبْرَاهِيمَ لِأَبِيهِ لَأَسْتَغْفِرَنَّ لَكَ وَمَا أَمْلِكُ لَكَ مِنَ
اللَّهِ مِن شَيْءٍ ۖ رَّبَّنَا عَلَيْكَ تَوَكَّلْنَا وَإِلَيْكَ أَنَبْنَا
وَإِلَيْكَ الْمَصِيرُ ﴿٤﴾

४) तिमीहरूका निम्ति "इब्राहीम(अ.)मा" र उनको साथीहरूमा उच्चतम नमूना छ । जबकि उनले, आफ्नो समुदायका मानिसहरूसित स्पष्ट रूपले भने कि हामी तिमीसित र अल्लाहबाट हटेर जसलाई तिमीहरू पूजा गर्दछौ, उनीहरूबाट विरक्त छौं । हामीले तिम्रो इन्कार गर्दछौं र हाम्रा तिम्रा बीच सधैंको लागि शत्रुता र विद्धेष प्रकट भइसक्यो, जबसम्म तिमी एउटै अल्लाहमाथि ईमान ल्याउँदैनौ । तर इब्राहीम(अ.)को आफ्नो पितासित यो भन्नु अपवाद हो कि म तपाईको लागि क्षमाको प्रार्थना अवश्य गर्नेछु र अल्लाहको सामु तपाईको सम्बन्धमा मलाई कुनै कुराको अधिकार प्राप्त छैन । हे हाम्रा पालनकर्ता, तिमी माथि नै हाम्रो भरोसा छ र तिमीतिर नै हामी प्रवृत्त हुन्छौं, र तिम्रै तिर फर्केर आउनुपर्ने छ ।

५) हे, हाम्रा पालनकर्ता ! तिमीले हामीलाई काफिरहरूको परीक्षामा नहाल । र हे हाम्रा पालनकर्ता ! हामीलाई क्षमा गरिदेऊ । निश्चय नै तिमी अधिपत्यशाली, तत्वदर्शी छौ ।

رَبَّنَا لَا تَجْعَلْنَا فِتْنَةً لِّلَّذِينَ كَفَرُوا وَاغْفِرْ لَنَا رَبَّنَا ۖ إِنَّكَ أَنتَ الْعَزِيزُ الْحَكِيمُ ۝٥

६) निश्चय नै तिम्रो निम्ति यिनीहरूमा राम्रो आदर्श छ र त्यस व्यक्तिको निम्ति जसले अल्लाह र अन्तिम दिनको भेटको आशा राख्दछ । र जो कोही विमुख हुन्छ त अल्लाह त निस्पृह, सजाय दिनेवाला र आफू स्वयंमा प्रशंसित छ ।

لَقَدْ كَانَ لَكُمْ فِيهِمْ أُسْوَةٌ حَسَنَةٌ لِّمَن كَانَ يَرْجُو اللَّهَ وَالْيَوْمَ الْآخِرَ ۚ وَمَن يَتَوَلَّ فَإِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ۝٦

७) हुनसक्छ कि अल्लाहले चाँडै तिमी र तिम्रा शत्रुहरूबीच, मित्रताको सृजना गरिदिओस् । अल्लाह बडो सामर्थ्यवान छ र अल्लाह अतयन्त क्षमाशील दयावान छ ।

عَسَى اللَّهُ أَن يَجْعَلَ بَيْنَكُمْ وَبَيْنَ الَّذِينَ عَادَيْتُم مِّنْهُم مَّوَدَّةً ۚ وَاللَّهُ قَدِيرٌ ۚ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ ۝٧

८) जुन मानिसहरूले तिमीसित धर्मको बारेमा युद्ध गरेनन् र न तिमीलाई तिम्रा घरहरूबाट निष्कासित गरे, उनीहरूसँग राम्रो र न्यायपूर्ण व्यवहार गर्नबाट अल्लाहले तिमीलाई मनाहि गर्दैन । अपितु अल्लाहले त न्याय गर्नेहरूसँग प्रेम गर्दछ ।

لَّا يَنْهَاكُمُ اللَّهُ عَنِ الَّذِينَ لَمْ يُقَاتِلُوكُمْ فِي الدِّينِ وَلَمْ يُخْرِجُوكُم مِّن دِيَارِكُمْ أَن تَبَرُّوهُمْ وَتُقْسِطُوا إِلَيْهِمْ ۚ إِنَّ اللَّهَ يُحِبُّ الْمُقْسِطِينَ ۝٨

९) अल्लाहले ती मानिसहरूसँग मात्र तिमीलाई मित्रता गर्नबाट मनाही गर्दछ, जसले तिमीसित धर्मको बारेमा लडाई गरे, र तिमीलाई तिम्रा घरहरूबाट निष्कासित गरे र

إِنَّمَا يَنْهَاكُمُ اللَّهُ عَنِ الَّذِينَ قَاتَلُوكُمْ فِي الدِّينِ وَأَخْرَجُوكُم مِّن دِيَارِكُمْ وَظَاهَرُوا عَلَىٰ إِخْرَاجِكُمْ أَن تَوَلَّوْهُمْ ۚ وَمَن يَتَوَلَّهُمْ فَأُولَٰئِكَ هُمُ الظَّالِمُونَ ۝٩

तिम्रो निष्काशनमा अरुको सहायता गरे । तसर्थ जुन मानिसहरूले यस्ता मानिसहरूसँग मित्रता गर्छन्, तिनै अत्याचारी हुन् ।

१०) मोमिनहरू ! जब तिम्रो पासमा मोमिन स्त्रीहरू आप्रवासी भएर आउँछिन् भने उनीहरूलाई तिमीले जाँची हाल । वास्तवमा उनीहरूको ईमानलाई राम्ररी परीक्षा गर्ने त अल्लाह हो तर यदि उनीहरू तिमीलाई ईमानवाली लाग्दछिन् भने, उनीहरूलाई तिमीले अब कुफ्फारको पासमा फिर्ता नपठाऊ । ती स्त्रीहरू उनीहरूका लागि वैध छैनन्, र न उनीहरू ती स्त्रीहरूको लागि वैध छन् । र जे-जति ती काफिरहरूले खर्च गरेका छन्, त्यो उनीहरूलाई फिर्ता दिइहाल । र ती स्त्रीहरूलाई महर दिएर उनीसित निकाह गर्नुमा तिमीलाई कुनै पाप छैन । र काफिर स्त्रीहरूको सतित्व आफ्नो बैवाहिक अधिकारमा नराख जे-जति तिमीले उनीहरूमाथि खर्च गरेका छौ, तिमीले उनीहरूसित मागिहाल र जे-जति काफिरहरूले खर्च गरेका छन्, त्यो काफिरहरू मागिहालुन्, यो अल्लाहको निर्णय हो, जसले तिमीहरू बीच फैसला गर्दछ । अल्लाह सर्वज्ञानी र तत्वदर्शी छ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا جَآءَكُمُ ٱلۡمُؤۡمِنَٰتُ مُهَٰجِرَٰتٖ
فَٱمۡتَحِنُوهُنَّۖ ٱللَّهُ أَعۡلَمُ بِإِيمَٰنِهِنَّۖ فَإِنۡ
عَلِمۡتُمُوهُنَّ مُؤۡمِنَٰتٖ فَلَا تَرۡجِعُوهُنَّ إِلَى ٱلۡكُفَّارِۖ
لَا هُنَّ حِلّٞ لَّهُمۡ وَلَا هُمۡ يَحِلُّونَ لَهُنَّۖ وَءَاتُوهُم مَّآ
أَنفَقُواْۚ وَلَا جُنَاحَ عَلَيۡكُمۡ أَن تَنكِحُوهُنَّ إِذَآ ءَاتَيۡتُمُوهُنَّ
أُجُورَهُنَّۚ وَلَا تُمۡسِكُواْ بِعِصَمِ ٱلۡكَوَافِرِ وَسۡـَٔلُواْ
مَآ أَنفَقۡتُمۡ وَلۡيَسۡـَٔلُواْ مَآ أَنفَقُواْۚ ذَٰلِكُمۡ حُكۡمُ ٱللَّهِ
يَحۡكُمُ بَيۡنَكُمۡۖ وَٱللَّهُ عَلِيمٌ حَكِيمٞ ١٠

وَاِنۡ فَاتَكُمۡ شَیۡءٌ مِّنۡ اَزۡوَاجِكُمۡ اِلَى الۡكُفَّارِ فَعَاقَبۡتُمۡ فَاٰتُوا الَّذِیۡنَ ذَهَبَتۡ اَزۡوَاجُهُمۡ مِّثۡلَ مَاۤ اَنۡفَقُوۡا ؕ وَاتَّقُوا اللّٰهَ الَّذِیۡۤ اَنۡتُمۡ بِهٖ مُؤۡمِنُوۡنَ ﴿۱۱﴾

११) र यदि तिम्रो कुनै स्त्री(स्वास्नी) तिम्रो हातबाट फुत्केर काफिरहरू कहाँ गइहाल्छी र तिमीलाई उनीहरूसित बदलाको औसर प्राप्त हुन्छ भने जसका स्त्रीहरू गइहालेका छिन्, उनीहरूलाई त्यति दिइहाल जति उनीहरूले खर्च गरेका थिए, र अल्लाहसित डर जसमाथि तिमी ईमान राख्दछौ ।

يٰۤاَيُّهَا النَّبِیُّ اِذَا جَآءَكَ الۡمُؤۡمِنٰتُ یُبَایِعۡنَكَ عَلٰۤی اَنۡ لَّا یُشۡرِكۡنَ بِاللّٰهِ شَیۡـًٔا وَّلَا یَسۡرِقۡنَ وَلَا یَزۡنِیۡنَ وَلَا یَقۡتُلۡنَ اَوۡلَادَهُنَّ وَلَا یَاۡتِیۡنَ بِبُهۡتَانٍ یَّفۡتَرِیۡنَهٗ بَیۡنَ اَیۡدِیۡهِنَّ وَاَرۡجُلِهِنَّ وَلَا یَعۡصِیۡنَكَ فِیۡ مَعۡرُوۡفٍ فَبَایِعۡهُنَّ وَاسۡتَغۡفِرۡ لَهُنَّ اللّٰهَ ؕ اِنَّ اللّٰهَ غَفُوۡرٌ رَّحِیۡمٌ ﴿۱۲﴾

१२) हे पैगम्बर जब तिम्रो पासमा मोमिना स्त्रीहरू यस कुरामा बैअत (बाचा) गर्न आउँछिन् कि उनीहरूले अल्लाहसित अरु कसैलाई साझेदार बनाउने छैनिन् न चोरी गर्नेछिन्, न व्यभिचार गर्नेछिन्, न आफ्ना सन्तानहरूको हत्या गर्नेछिन् र न आफ्ना हात र खुट्टाहरूका बीच कुनै आरोप रच्नेछिन्, र कुनै राम्रो काममा न तिम्रो अवज्ञा गर्नेछिन्, तब उनीहरूसित वाचा लिईहाल्नुस् र उनीहरूका निम्ति अल्लाहसित क्षमाको प्रार्थना गर्नुस् । निश्चय नै अल्लाह बडो क्षमाशील र अत्यन्त दयावान छ ।

یٰۤاَیُّهَا الَّذِیۡنَ اٰمَنُوۡا لَا تَتَوَلَّوۡا قَوۡمًا غَضِبَ اللّٰهُ عَلَیۡهِمۡ قَدۡ یَئِسُوۡا مِنَ الۡاٰخِرَةِ كَمَا یَئِسَ الۡكُفَّارُ مِنۡ اَصۡحٰبِ الۡقُبُوۡرِ ﴿۱۳﴾

१३) हे ईमानवालाहरू! तिमी यस्ता मानिसहरूसित मित्रता नगर जसमाथि अल्लाहको प्रकोप भइसकेको छ । जो परलोकबाट यसरी निराश भइसकेका छन्, जुन प्रकारले इन्कार गर्नेवालाहरू चिहान वालााहरूसित निराश भइसकेकाछन् ।

## सूरतुस्सफ़्फ़-६१



सूरतुस्सफ़्फ़ मदनी हो, यसमा १४ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

سَبَّحَ لِلّٰهِ مَا فِى السَّمٰوٰتِ وَمَا فِى الْاَرْضِ ۚ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ①

१) आकाश र धरतीमा भएका सबैले अल्लाहको गुणगान गर्छन् र ऊ अधिपत्यशाली, तत्वदर्शी छ ।

يٰۤاَيُّهَا الَّذِيْنَ اٰمَنُوْا لِمَ تَقُوْلُوْنَ مَا لَا تَفْعَلُوْنَ ②

२) हे मोमिनहरू ! तिमीले यस्ता कुरा किन भन्ने गर्दछौ जो गर्दैनौ ?

كَبُرَ مَقْتًا عِنْدَ اللّٰهِ اَنْ تَقُوْلُوْا مَا لَا تَفْعَلُوْنَ ③

३) तिमी जुन गर्दैनौ त्यो भन्नु अल्लाहलाई धेरै अप्रिय छ ।

اِنَّ اللّٰهَ يُحِبُّ الَّذِيْنَ يُقَاتِلُوْنَ فِىْ سَبِيْلِهٖ صَفًّا كَاَنَّهُمْ بُنْيَانٌ مَّرْصُوْصٌ ④

४) निःसन्देह अल्लाहले तिनीहरू संग प्रेम गर्नुहुन्छ जुन मानिसहरूले अल्लाहको मार्गमा स्थिर भई लड्छन् कि मानौं सीसा भरिएको बलियो ठोस पर्खाल हुन् ।

وَاِذْ قَالَ مُوْسٰى لِقَوْمِهٖ يٰقَوْمِ لِمَ تُؤْذُوْنَنِىْ وَقَدْ تَّعْلَمُوْنَ اَنِّىْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ ۗ فَلَمَّا زَاغُوْۤا اَزَاغَ اللّٰهُ قُلُوْبَهُمْ ۗ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الْفٰسِقِيْنَ ⑤

५) र स्मरण गर जब “मूसा(अ.)ले” आफ्नो कौमसित भने कि हे मेरा समुदायका मानिसहरू तिमीले मलाई किन दुःख दिन्छौ, जब कि तिमी जान्दछौ कि म तिम्रो लागि अल्लाहले पठाएको रसूल हूँ, अनि जब उनीहरूले बाङ्गोपना अपनाए त अल्लाहले पनि उनको हृदयलाई बढी बाङ्गो बनाइदियो । र अल्लाहले अवज्ञाकारीहरूलाई सोझो मार्ग देखाउँदैन ।

وَاِذْ قَالَ عِيْسَى ابْنُ مَرْيَمَ يٰبَنِيْٓ اِسْرَاۤءِيْلَ اِنِّيْ رَسُوْلُ اللّٰهِ اِلَيْكُمْ مُّصَدِّقًا لِّمَا بَيْنَ يَدَيَّ مِنَ التَّوْرٰىةِ وَمُبَشِّرًاۢ بِرَسُوْلٍ يَّأْتِيْ مِنْۢ بَعْدِى اسْمُهٗٓ اَحْمَدُ ۗ فَلَمَّا جَاۤءَهُمْ بِالْبَيِّنٰتِ قَالُوْا هٰذَا سِحْرٌ مُّبِيْنٌ ۝٦

६) र जब मरियमको छोरा ईसा(अ.)ले भनेः कि हे मेरो क़ौम । बनी इस्राईल ! म तिमी सबैको लागि अल्लाहबाट पठाइएको रसूल हूँ । म भन्दा पहिलेको किताब तौरातको म प्रमाणित गर्नेवाला छु र म पछि आउने एउटा संदेष्टा जसको नाम अहमद हुनेछ, उनको शुभागमनको शुभ-सन्देश सुनाउँछु । अनि जब उनी तिनीहरूको पासमा स्पष्ट निशानीहरू लिएर आए, तब तिनीहरूले भन्न थाले कि यो त स्पष्ट जादू हो ।

وَمَنْ اَظْلَمُ مِمَّنِ افْتَرٰى عَلَى اللّٰهِ الْكَذِبَ وَهُوَ يُدْعٰٓى اِلَى الْاِسْلَامِ ۗ وَاللّٰهُ لَا يَهْدِى الْقَوْمَ الظّٰلِمِيْنَ ۝٧

७) अब त्यस व्यक्तिभन्दा बढी अत्याचारी को होला जसले अल्लाहमाथि मनगढन्ते दोषारोपण गर्दछ, जबकि उसलाई इस्लाम तिर बोलाइदै छ ? अल्लाहले अत्याचारीहरूलाई सिधा मार्ग देखाउँदैन ।

يُرِيْدُوْنَ لِيُطْفِـُٔوْا نُوْرَ اللّٰهِ بِاَفْوَاهِهِمْ ۗ وَاللّٰهُ مُتِمُّ نُوْرِهٖ وَلَوْ كَرِهَ الْكٰفِرُوْنَ ۝٨

८) उनीहरूले चाहन्छन्ः कि अल्लाहको प्रकाशलाई आफ्नो मूखले निभाइदेऊन् । किन्तु अल्लाहले आफ्नो प्रकाशलाई पूर्ण गर्नेवाला छ । यद्यपि इन्कार गर्नेहरूलाई अप्रिय नै किन नलागोस् ।

هُوَ الَّذِيْٓ اَرْسَلَ رَسُوْلَهٗ بِالْهُدٰى وَدِيْنِ الْحَقِّ لِيُظْهِرَهٗ عَلَى الدِّيْنِ كُلِّهٖ وَلَوْ كَرِهَ الْمُشْرِكُوْنَ ۝٩

९) उही त हो, जसले आफ्नो रसूललाई मार्गदर्शन र सत्य धर्मको साथ पठायो ताकि त्यसलाई अरु धर्महरूमाथि अधिपत्य प्रदान गरोस्,

चाहे मुश्रिकहरूलाई अप्रिय नै किन नलागोस् ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا هَلْ أَدُلُّكُمْ عَلَىٰ تِجَارَةٍ تُنْجِيكُمْ مِنْ عَذَابٍ أَلِيمٍ ﴿١٠﴾

१०) हे ईमानवालाहरू ! के मैले तिमीहरूलाई यस्तो व्यापार बताऊँ जसले तिमीलाई दुःखद यातनाबाट बचाइहालोस् ।

تُؤْمِنُونَ بِاللَّهِ وَرَسُولِهِ وَتُجَاهِدُونَ فِي سَبِيلِ اللَّهِ بِأَمْوَالِكُمْ وَأَنْفُسِكُمْ ۚ ذَٰلِكُمْ خَيْرٌ لَكُمْ إِنْ كُنْتُمْ تَعْلَمُونَ ﴿١١﴾

११) अल्लाहमाथि र उसको रसूलमाथि आस्था राख र अल्लाहको बाटोमा आफ्नो सम्पत्ति र ज्यानले जेहाद गर, यो तिम्रो हकमा राम्रो छ यदि तिमीमा ज्ञान छ ।

يَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ وَيُدْخِلْكُمْ جَنَّاتٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ وَمَسَاكِنَ طَيِّبَةً فِي جَنَّاتِ عَدْنٍ ۚ ذَٰلِكَ الْفَوْزُ الْعَظِيمُ ﴿١٢﴾

१२) अल्लाहले तिम्रा पापहरूलाई माफ गरिदिनेछ र तिमीलाई स्वर्गका बगैंचाहरू जसमुनि नहरहरू बगिराखेका छन्, र सफा घरमा जुन सधैंका स्वर्ग छन्, प्रविष्ट गराउनेछ । यो ठूलो सफलता हो ।

وَأُخْرَىٰ تُحِبُّونَهَا ۖ نَصْرٌ مِنَ اللَّهِ وَفَتْحٌ قَرِيبٌ ۗ وَبَشِّرِ الْمُؤْمِنِينَ ﴿١٣﴾

१३) र एउटा अर्को पुरस्कार पनि दिनेछ जसलाई तिमीले रुचाउँछौ त्यो अल्लाहको तर्फबाट सहायता र शीघ्र विजय प्राप्ति हुनेछ मोमिनहरूलाई (यसको) शुभ-सन्देश सुनाइदेऊ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا كُونُوا أَنْصَارَ اللَّهِ كَمَا قَالَ عِيسَى ابْنُ مَرْيَمَ لِلْحَوَارِيِّينَ مَنْ أَنْصَارِي إِلَى اللَّهِ ۖ قَالَ الْحَوَارِيُّونَ نَحْنُ أَنْصَارُ اللَّهِ ۖ فَآمَنَتْ طَائِفَةٌ مِنْ بَنِي إِسْرَائِيلَ وَكَفَرَتْ طَائِفَةٌ ۖ فَأَيَّدْنَا الَّذِينَ آمَنُوا عَلَىٰ عَدُوِّهِمْ فَأَصْبَحُوا ظَاهِرِينَ ﴿١٤﴾

१४) हे मोमिनहरू ! तिमी अल्लाहका मद्दत गर्ने भइहाल जस्तो कि ईसा बिन मरियमले हवारीहरूसित भनेका थिए: कि को छ जसले अल्लाहको बाटोमा मेरो सहायता गर्नेछ ?

हवारीहरूले भनेः कि हामी अल्लाहको बाटोमा मद्दतदिने हौं त बनी इस्राईल मध्ये एउटा समूहले त ईमान ल्यायो र एउटा समूह काफिर रह्यो । अन्ततः हामीले ईमानवालाहरूलाई उनीहरूको शत्रुहरूको मुकाबिलामा मद्दत गर्‍यौं त उनीहरूलाई वर्चस्व प्राप्त भइहाल्यो ।



# सूरतुल् जुमुअः-६२




सूरतुल् जुमुअः मदनी हो, यसमा ११ आयतहरू र २ रुकूअ्हरू छन्।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) आकाशहरू र धरतीमा भएका सबै कुराले अल्लाहको पवित्रताको गुणगान गर्छन् जो पवित्र सम्राट अधिपत्यशाली र तत्वदर्शी छ।

يُسَبِّحُ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْاَرْضِ الْمَلِكِ الْقُدُّوْسِ الْعَزِيْزِ الْحَكِيْمِ ①

२) उही हो जसले उम्मिहरूमा (अनपढहरूमा) तिनीहरू मध्येबाट एउटा रसूल पठायो। जसले उनको सामु उसका आयतहरू पढेर सुनाउँछ र उनीलाई पवित्र गर्दछ र उनीहरूलाई किताब र तत्वदर्शीता सिकाउँदछ, र निःसन्देह यसभन्दा पहिला यी मानिसहरू खुल्ला मार्ग विचलनमा थिए।

هُوَ الَّذِيْ بَعَثَ فِي الْاُمِّيّٖنَ رَسُوْلًا مِّنْهُمْ يَتْلُوْا عَلَيْهِمْ اٰيٰتِهٖ وَيُزَكِّيْهِمْ وَيُعَلِّمُهُمُ الْكِتٰبَ وَالْحِكْمَةَ وَاِنْ كَانُوْا مِنْ قَبْلُ لَفِيْ ضَلٰلٍ مُّبِيْنٍ ②

३) र ती अन्य मानिसहरूका लागि पनि जो अझै उनीसित भेटेका छैनन्, उनीहरू मध्यकै हुनेछन्। र ऊ अधिपत्यशाली, तत्वदर्शी छ।

وَّاٰخَرِيْنَ مِنْهُمْ لَمَّا يَلْحَقُوْا بِهِمْ وَهُوَ الْعَزِيْزُ الْحَكِيْمُ ③

४) यो अल्लाहको उदार अनुग्रह हो, जसलाई चाहन्छ, त्यसलाई प्रदान गर्दछ। र अल्लाह अपार अनुग्रहको स्वामी छ।

ذٰلِكَ فَضْلُ اللّٰهِ يُؤْتِيْهِ مَنْ يَّشَآءُ وَاللّٰهُ ذُو الْفَضْلِ الْعَظِيْمِ ④

५) जुन मानिसहरूलाई तौरेत अनुरूप

مَثَلُ الَّذِيْنَ حُمِّلُوا التَّوْرٰىةَ ثُمَّ لَمْ يَحْمِلُوْهَا كَمَثَلِ

الْحِمَارِ يَحْمِلُ أَسْفَارًا ۚ بِئْسَ مَثَلُ الْقَوْمِ الَّذِينَ كَذَّبُوا بِآيَاتِ اللَّهِ ۚ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥﴾

आचरण कार्यान्वयन गर्न आदेश दिइयो अनि उनीहरूले त्यसको पालन गरेनन् । त उनको दृष्टान्त त्यस गदहाको जस्तो छ । जसले धेरै किताब बोकेको छ । साह्रै नै नराम्रो उदाहरण छ ती मानिसहरूको जसले अल्लाहका आयतहरूलाई झुठलाए । अल्लाहले यस्ता अत्याचारीहरूलाई सोझो मार्ग देखाउँदैनन् ।

قُلْ يَا أَيُّهَا الَّذِينَ هَادُوا إِن زَعَمْتُمْ أَنَّكُمْ أَوْلِيَاءُ لِلَّهِ مِن دُونِ النَّاسِ فَتَمَنَّوُا الْمَوْتَ إِن كُنتُمْ صَادِقِينَ ﴿٦﴾

६) भनीदिनुस् कि हे यहूदीहरू ! यदि तिमीले यो दाबी गर्छौ कि अरु मानिसहरू भन्दा तिमी नै अल्लाहको प्रेमपात्र हौ भने मृत्युको कामना गर, यदि तिमी साँचो हौ ।

وَلَا يَتَمَنَّوْنَهُ أَبَدًا بِمَا قَدَّمَتْ أَيْدِيهِمْ ۚ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٧﴾

७) यिनीहरूले आफ्नाकर्महरूको कारणले, जुन गरिसकेछन्, कहिल्यै यसको कामना गर्ने छैनन् र अल्लाह अत्याचारीहरूलाई राम्ररी जान्दछ ।

قُلْ إِنَّ الْمَوْتَ الَّذِي تَفِرُّونَ مِنْهُ فَإِنَّهُ مُلَاقِيكُمْ ۖ ثُمَّ تُرَدُّونَ إِلَىٰ عَالِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٨﴾

८) भनिदिनुस् ! कि जुन मृत्युसित तिमी भाग्दछौ, त्यो त तिम्रो सामु आएर नै छाड्छ, अनि तिमी अदृश्य र प्रकटको जान्नेवाला (अल्लाह) तिर फर्काइनेछौ, अनि जे-जति तिमीले गरिराखेका छौ उसले तिमीलाई सबै बताउनेछ ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا نُودِيَ لِلصَّلَاةِ مِن يَوْمِ الْجُمُعَةِ فَاسْعَوْا إِلَىٰ ذِكْرِ اللَّهِ وَذَرُوا الْبَيْعَ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٩﴾

९) हे मोमिन्हरू ! जब शुक्रबारको दिन जुम्आको नमाजको निम्ति अजान दिइन्छ, तब तिमी अल्लाहको स्मरणको निम्ति दगुरिहाल र किन्न

वा बेच्न छाडिदेऊ । यो तिम्रो निम्ति राम्रो छ यदि तिमीले बुझ्छौ ।

فَإِذَا قُضِيَتِ الصَّلَوٰةُ فَانتَشِرُوا فِي الْأَرْضِ وَابْتَغُوا مِن فَضْلِ اللَّهِ وَاذْكُرُوا اللَّهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ ﴿١٠﴾

१०) अनि जब नमाज पूरा भइहालोस् तब आ-आफ्नो बाटो लाग र अल्लाहको उदार अनुग्रह खोज, र अल्लाहलाई धेरै स्मरण गर्ने गर ताकि तिमी सफल होऊ ।

وَإِذَا رَأَوْا تِجَارَةً أَوْ لَهْوًا انفَضُّوا إِلَيْهَا وَتَرَكُوكَ قَائِمًا ۚ قُلْ مَا عِندَ اللَّهِ خَيْرٌ مِّنَ اللَّهْوِ وَمِنَ التِّجَارَةِ ۚ وَاللَّهُ خَيْرُ الرَّازِقِينَ ﴿١١﴾

११) तर जब उनीहरूले व्यापार र खेल तमाशा देख्दछन् तब उसैतिर दगुरिहाल्छन् र तपाईलाई उभेको अवस्थामा छाडिदिन्छन् । भनिदिनुस् कि जे-जति अल्लाहको पासमा छ त्यो तमाशा र व्यापार भन्दा कैयौं गुणा राम्रो छ । र अल्लाह सबभन्दा राम्रो आजीविका प्रदान गर्नेवाला छ ।



# सूरतुल् मुनाफ़िकून-६३




सूरतुल् मुनाफ़िकून मदनी हो, यसमा ११ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِذَا جَاءَكَ الْمُنَافِقُونَ قَالُوا نَشْهَدُ إِنَّكَ لَرَسُولُ اللَّهِ ۗ وَاللَّهُ يَعْلَمُ إِنَّكَ لَرَسُولُهُ وَاللَّهُ يَشْهَدُ إِنَّ الْمُنَافِقِينَ لَكَاذِبُونَ ①

१) हे मोहम्मद ! जब मुनाफिक्हरू तपाई सामु आउँदछन् तब भन्दछन् कि हामी साक्षी छौं कि निश्चय नै तपाई अल्लाहको रसूल हुनुहुन्छ । अल्लाह जान्दछ कि निश्चय नै तपाई उसको रसूल हुनुहुन्छ तर अल्लाह गवाही दिन्छ कि यी मुनाफिकहरू एकदमै झूठा छन् ।

اتَّخَذُوا أَيْمَانَهُمْ جُنَّةً فَصَدُّوا عَنْ سَبِيلِ اللَّهِ ۚ إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ②

२) उनीहरूले आफ्नो शपथहरूलाई कवच बनाइसकेका छन् । यसप्रकार उनीहरूले अल्लाहको मार्गबाट रोकिए । निश्चय नै त्यो नराम्रो काम छ जुन यिनीहरूले गरिराखेका छन् ।

ذَٰلِكَ بِأَنَّهُمْ آمَنُوا ثُمَّ كَفَرُوا فَطُبِعَ عَلَىٰ قُلُوبِهِمْ فَهُمْ لَا يَفْقَهُونَ ③

३) यो यसकारण कि यिनीहरूले ईमान ल्याए पछि फेरि काफिर भइहाले, तसर्थ उनीहरूको हृदयमा छाप लगाई दिइयो अब यिनीहरूले बुझ्दैनन् ।

وَإِذَا رَأَيْتَهُمْ تُعْجِبُكَ أَجْسَامُهُمْ ۖ وَإِنْ يَقُولُوا تَسْمَعْ لِقَوْلِهِمْ ۖ كَأَنَّهُمْ خُشُبٌ مُسَنَّدَةٌ ۖ يَحْسَبُونَ كُلَّ صَيْحَةٍ عَلَيْهِمْ ۚ هُمُ الْعَدُوُّ فَاحْذَرْهُمْ ۚ قَاتَلَهُمُ اللَّهُ ۖ أَنَّىٰ يُؤْفَكُونَ ④

४) तपाईले उनीहरूलाई जब देख्नु हुन्छ त उनका शरीर तपाईलाई राम्रो लाग्दछन् र यदि तिनीहरूले कुरा गर्दछन् त उनका कुरा तपाई सुनी राख्नु हुन्छ । यसरी जस्तो कि उनीहरू काठहरू (थाम) हुन् जसलाई

भित्ताको सहारामा उभ्याइएको छ । प्रत्येक ठूलो स्वरलाई उनीहरूले आफ्नै विरुद्धमा ठान्दछन् । तिनै वास्तविक शत्रु हुन् । अतः उनीहरूबाट पन्छिएर बस । अल्लाह उनीहरूलाई समाप्त गरोस् । उनीहरू विमुख भई कहाँ गइराखेका छन् ।

وَإِذَا قِيلَ لَهُمْ تَعَالَوْا يَسْتَغْفِرْ لَكُمْ رَسُولُ اللَّهِ لَوَّوْا رُءُوسَهُمْ وَرَأَيْتَهُمْ يَصُدُّونَ وَهُمْ مُسْتَكْبِرُونَ ٥

५) जब उनीसित भनिन्छ कि आऊ अल्लाहका रसूल तिम्रा निम्ति क्षमा माँगुन्, त टाउको हल्लाइदिन्छन् र तपाईले देख्नु हुनेछ कि घमण्ड गर्दै मुख फर्काइहाल्दछन् ।

سَوَاءٌ عَلَيْهِمْ أَسْتَغْفَرْتَ لَهُمْ أَمْ لَمْ تَسْتَغْفِرْ لَهُمْ لَنْ يَغْفِرَ اللَّهُ لَهُمْ إِنَّ اللَّهَ لَا يَهْدِي الْقَوْمَ الْفَاسِقِينَ ٦

६) तपाईले उनको निम्ति क्षमा माँग्नु वा नमाँग्नु, दुवै समान छ । अल्लाहले उनलाई कहिल्यै क्षमा गर्दैन । निःसन्देह अल्लाहले यस्ता अवज्ञाकारीहरूलाई मार्गदर्शन प्रदान गर्दैन ।

هُمُ الَّذِينَ يَقُولُونَ لَا تُنْفِقُوا عَلَىٰ مَنْ عِنْدَ رَسُولِ اللَّهِ حَتَّىٰ يَنْفَضُّوا وَلِلَّهِ خَزَائِنُ السَّمَاوَاتِ وَالْأَرْضِ وَلَٰكِنَّ الْمُنَافِقِينَ لَا يَفْقَهُونَ ٧

७) यिनै मानिस हुन् जसले भन्दछन्: कि जो अल्लाहको रसूलको साथमा रहन्छन्, उनीमाथि खर्च नगर, ताकि उनीहरू स्वयं यताउता छरिऊन् । जबकि आकाशहरू र धरतीका सबै खजाना अल्लाहकै हुन् तर मुनाफिकहरू बुझ्दैनन् ।

يَقُولُونَ لَئِنْ رَجَعْنَا إِلَى الْمَدِينَةِ لَيُخْرِجَنَّ الْأَعَزُّ مِنْهَا الْأَذَلَّ وَلِلَّهِ الْعِزَّةُ وَلِرَسُولِهِ وَلِلْمُؤْمِنِينَ وَلَٰكِنَّ الْمُنَافِقِينَ لَا يَعْلَمُونَ ٨

८) उनीहरू भन्दछन्: कि यदि हामीले फर्केर मदिना जान्छौं भने अधिक मर्यादावालाहरूले अपमानितलाई त्यहाँबाट निकालिदिनेछन् हेर इज्जत

र प्रतिष्ठा त अल्लाह र उसको रसूल र मोमिनहरूको निम्ति छ, तर ती मुनाफिकहरूले जान्दैनन् ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تُلْهِكُمْ أَمْوَٰلُكُمْ وَلَآ أَوْلَٰدُكُمْ عَن ذِكْرِ ٱللَّهِ ۚ وَمَن يَفْعَلْ ذَٰلِكَ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلْخَٰسِرُونَ ⑨

९) हे मोमिनहरू ! तिम्रा माल, सम्पत्ति र सन्तानले तिमीलाई अल्लाहको स्मरणबाट गाफिल नबनाइदेओस् र जसले यस्तो गर्नेछ त्यसले घाटा बेहोर्ने छ ।

وَأَنفِقُوا۟ مِن مَّا رَزَقْنَٰكُم مِّن قَبْلِ أَن يَأْتِىَ أَحَدَكُمُ ٱلْمَوْتُ فَيَقُولَ رَبِّ لَوْلَآ أَخَّرْتَنِىٓ إِلَىٰٓ أَجَلٍ قَرِيبٍ فَأَصَّدَّقَ وَأَكُن مِّنَ ٱلصَّٰلِحِينَ ⑩

१०) र जे हामीले तिमीलाई प्रदान गरेका छौं, त्यसबाट खर्च गर यसभन्दा अगाडि कि तिमी मध्ये कसैको मृत्यु आइहालोस् र (त्यसबेला) भन्न थालोस् कि हे मेरो पालनकर्ता अरु समय किन दिएनौ ? म दान गर्दथें र असल मानिसहरूमा शम्मिलित भइहाल्थें ।

وَلَن يُؤَخِّرَ ٱللَّهُ نَفْسًا إِذَا جَآءَ أَجَلُهَا ۚ وَٱللَّهُ خَبِيرٌۢ بِمَا تَعْمَلُونَ ⑪

११) तर अल्लाहले कुनै व्यक्तिलाई जब उसको निर्धारित समय आई पुग्दछ तब कदापि मोहलत दिंदैन । र जे तिमीले गर्दछौ अल्लाह त्यो सबैबाट अवगत छ ।



# सूरतुत् तगाबुन-६४



सूरतुत् तगाबुन मदनी हो यसमा १८ आयतहरू र २ रुकूअ् छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) (त्यो प्रत्येक कुरो) जुन आकाशमा छन् र धरतीमा छन्, अल्लाहकै पवित्रताको वर्णन गर्दछन् । उसैको सत्ता छ र प्रशंसा पनि र ऊ हरेक कुरामाथि सामर्थवान छ !

يُسَبِّحُ لِلّٰهِ مَا فِي السَّمٰوٰتِ وَمَا فِي الْأَرْضِ ۚ لَهُ الْمُلْكُ وَلَهُ الْحَمْدُ ۖ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرٌ ①

२) उसैले तिमीलाई सृष्टि गर्‍यो, अनि तिमी मध्ये कोही इन्कार गर्नेवाला छन् र केही ईमानवाला छन् र तिमीले जे गर्दछौ अल्लाह त्यसलाई राम्ररी जान्दछ ।

هُوَ الَّذِيْ خَلَقَكُمْ فَمِنْكُمْ كَافِرٌ وَّمِنْكُمْ مُّؤْمِنٌ ۚ وَاللّٰهُ بِمَا تَعْمَلُوْنَ بَصِيْرٌ ②

३) उसैले आकाशहरू र धरतीलाई इन्साफ र कारीगरीका साथ सृष्टि गर्‍यो र तिम्रो रूप बनायो, र राम्रो बनायो र उसैतिर अन्ततः जानुछ ।

خَلَقَ السَّمٰوٰتِ وَالْأَرْضَ بِالْحَقِّ وَصَوَّرَكُمْ فَأَحْسَنَ صُوَرَكُمْ ۚ وَإِلَيْهِ الْمَصِيْرُ ③

४) जे-जति आकाशहरूमा र जमिनमा छन् उसले सबै जान्दछ । र जे-जति तिमीले लुकाउँछौ र खुल्ला गर्दछौ, सबै जान्दछ । र अल्लाह त छातीभित्रको कुरा पनि जान्दछ ।

يَعْلَمُ مَا فِي السَّمٰوٰتِ وَالْأَرْضِ وَيَعْلَمُ مَا تُسِرُّوْنَ وَمَا تُعْلِنُوْنَ ۚ وَاللّٰهُ عَلِيْمٌ ۢ بِذَاتِ الصُّدُوْرِ ④

५) के तिमीलाई यसभन्दा पहिलाका काफिरहरूको समाचार पुगेन ? जो आफ्ना कर्महरूको स्वाद चाखीसके र जसको लागि कठोर यातना छ ।

أَلَمْ يَأْتِكُمْ نَبَؤُا الَّذِيْنَ كَفَرُوْا مِنْ قَبْلُ ۫ فَذَاقُوْا وَبَالَ أَمْرِهِمْ وَلَهُمْ عَذَابٌ أَلِيْمٌ ⑤

ذَٰلِكَ بِأَنَّهُۥ كَانَت تَّأْتِيهِمْ رُسُلُهُم بِٱلْبَيِّنَٰتِ فَقَالُوٓا أَبَشَرٌ يَهْدُونَنَا فَكَفَرُوا وَتَوَلَّوا وَّٱسْتَغْنَى ٱللَّهُ ۚ وَٱللَّهُ غَنِىٌّ حَمِيدٌ ٦

६) यो यसकारण कि उनीहरूको नजिकमा संदेष्टाहरूले खुल्ला निशानीहरू लिएर आए, तब तिनीहरूले भन्दथे कि के मनुष्य हाम्रा पथ प्रदर्शन गर्नेछ ? तसर्थ मानेनन् र विमुख भइहाले, तब अल्लाहले पनि उनीहरूबाट बेपर्वाह भइहाल्यो र अल्लाह निस्पृह (र) सर्वगुण सम्पन्न छ ।

زَعَمَ ٱلَّذِينَ كَفَرُوٓا أَن لَّن يُبْعَثُوا ۚ قُلْ بَلَىٰ وَرَبِّى لَتُبْعَثُنَّ ثُمَّ لَتُنَبَّؤُنَّ بِمَا عَمِلْتُمْ ۚ وَذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرٌ ٧

७) ती काफिरहरूले सोचे कि उनीहरू पुन: जीवित गरिने छैनन् । तपाई भनिदिनुस् कि हो, मेरो पालनकर्ताको क़सम ! तिमी अवश्य नै उठाइने छौ, अनि जुन काम तिमीले गर्दै आएका छौ, तिमीलाई बताइने छ र यो अल्लाहको लागि अत्यन्त सरल छ ।

فَـَٔامِنُوا بِٱللَّهِ وَرَسُولِهِۦ وَٱلنُّورِ ٱلَّذِىٓ أَنزَلْنَا ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ٨

८) तसर्थ तिमीले अल्लाह र उसको रसूलमाथि र त्यस प्रकाशमाथि जुन हामीले अवतरित गरेका छौं ईमान ल्याऊ, र अल्लाह तिम्रा सम्पूर्ण क्रियाकलापबाट अवगत छ ।

يَوْمَ يَجْمَعُكُمْ لِيَوْمِ ٱلْجَمْعِ ذَٰلِكَ يَوْمُ ٱلتَّغَابُنِ ۗ وَمَن يُؤْمِنۢ بِٱللَّهِ وَيَعْمَلْ صَٰلِحًا يُكَفِّرْ عَنْهُ سَيِّـَٔاتِهِۦ وَيُدْخِلْهُ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ خَٰلِدِينَ فِيهَآ أَبَدًا ۚ ذَٰلِكَ ٱلْفَوْزُ ٱلْعَظِيمُ ٩

९) जुन दिन उसले तिमी सबैलाई एकत्रित हुने दिन एकत्रित गर्नेछ, त्यो हार र जीतको दिन हुनेछ र जसले अल्लाहमाथि ईमान ल्याए र असल कर्म गरे, उसले उनीबाट उनका नराम्रा कुराहरू हटाइदिनेछ र उनलाई स्वर्गको बागहरूमा

जसका मुनि नहरहरू बगिराखेका छन्, प्रविष्ट गराउनेछ, तिनीहरू सधैं त्यसमा रहनेछन् । यो ठूलो सफलता हो ।

وَالَّذِيْنَ كَفَرُوْا وَكَذَّبُوْا بِاٰيٰتِنَآ اُولٰٓئِكَ اَصْحٰبُ النَّارِ خٰلِدِيْنَ فِيْهَا ۗ وَبِئْسَ الْمَصِيْرُ ۝١٠

१०) र जसले कुफ्र गरे र हाम्रा आयतहरूलाई झूठा भने, ती नै नर्कवाला हुन् सधैं त्यसैमा रहनेछन् र त्यो नराम्रो ठाउँ हो ।

مَآ اَصَابَ مِنْ مُّصِيْبَةٍ اِلَّا بِاِذْنِ اللّٰهِ ۗ وَمَنْ يُّؤْمِنْ بِاللّٰهِ يَهْدِ قَلْبَهٗ ۗ وَاللّٰهُ بِكُلِّ شَيْءٍ عَلِيْمٌ ۝١١

११) अल्लाहको आज्ञा बिना कुनै पनि संकट आउँदैन । जसले अल्लाहमाथि ईमान ल्याए अल्लाहले उनको हृदयलाई सही मार्ग देखाउँछ र अल्लाह प्रत्येक कुरा राम्ररी जान्दछ ।

وَاَطِيْعُوا اللّٰهَ وَاَطِيْعُوا الرَّسُوْلَ ۚ فَاِنْ تَوَلَّيْتُمْ فَاِنَّمَا عَلٰى رَسُوْلِنَا الْبَلٰغُ الْمُبِيْنُ ۝١٢

१२) (मानिसहरू हो !) अल्लाहको आज्ञाको पालन गर र रसूलको आज्ञा पालन गर । यदि तिमीले मुख फर्कायौ भने हाम्रो पैगम्बरको जिम्मामा त मात्र सन्देशलाई स्पष्ट रूपमा पुऱ्याइदिनु हो ।

اَللّٰهُ لَآ اِلٰهَ اِلَّا هُوَ ۗ وَعَلَى اللّٰهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُوْنَ ۝١٣

१३) अल्लाह बाहेक कोही वास्तविक पूजनीय छैन र मोमिनहरूले अल्लाहमै भरोसा राख्नुपर्दछ ।

يٰٓاَيُّهَا الَّذِيْنَ اٰمَنُوْٓا اِنَّ مِنْ اَزْوَاجِكُمْ وَاَوْلَادِكُمْ عَدُوًّا لَّكُمْ فَاحْذَرُوْهُمْ ۚ وَاِنْ تَعْفُوْا وَتَصْفَحُوْا وَتَغْفِرُوْا فَاِنَّ اللّٰهَ غَفُوْرٌ رَّحِيْمٌ ۝١٤

१४) हे मोमिनहरू ! तिम्रा स्त्रीहरू र सन्तानहरूमध्ये केही तिम्रा शत्रु पनि छन्, उनीहरूबाट सावधान रहनु र यदि तिमीले माफ गरिदिन्छौ र पन्छिहाल्छौ र क्षमा गरिदिन्छौ भने

निश्चय नै अल्लाह बडो क्षमाशील अत्यन्त दयावान छ ।

إِنَّمَآ أَمۡوَٰلُكُمۡ وَأَوۡلَٰدُكُمۡ فِتۡنَةٞۚ وَٱللَّهُ عِندَهُۥٓ أَجۡرٌ عَظِيمٞ ١٥

१५) तिम्रा माल सम्पत्ति र सन्तान त तिम्रो लागि परीक्षा हुन् र अल्लाह कहाँ ठूलो प्रतिफल छ ।

فَٱتَّقُواْ ٱللَّهَ مَا ٱسۡتَطَعۡتُمۡ وَٱسۡمَعُواْ وَأَطِيعُواْ وَأَنفِقُواْ خَيۡرٗا لِّأَنفُسِكُمۡۗ وَمَن يُوقَ شُحَّ نَفۡسِهِۦ فَأُوْلَٰٓئِكَ هُمُ ٱلۡمُفۡلِحُونَ ١٦

१६) तसर्थ जहाँसम्म तिमीबाट हुनसक्छ, अल्लाहसित डर मान्ने गर र उसका आदेशहरूलाई सुन्दै र पालना गर्दै जाऊ । र उसको मार्गमा खर्च गर्ने गर, (यो) तिम्रो हकमा राम्रो छ । र जो आफ्नो मनको लोभ र कन्जूसीबाट सुरक्षित रह्यो त उही नै सफल भयो ।

إِن تُقۡرِضُواْ ٱللَّهَ قَرۡضًا حَسَنٗا يُضَٰعِفۡهُ لَكُمۡ وَيَغۡفِرۡ لَكُمۡۚ وَٱللَّهُ شَكُورٌ حَلِيمٌ ١٧

१७) यदि तिमीले अल्लाहलाई राम्रो ऋण दिन्छौ भने उसले त्यसलाई तिम्रो निम्ति कैयौं गुणा वृद्धि गरिदिनेछ । र तिम्रो पाप पनि क्षमा गरिदिनेछ । अल्लाह बडो गुणग्राहक र सहनशील छ ।

عَٰلِمُ ٱلۡغَيۡبِ وَٱلشَّهَٰدَةِ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ١٨

१८) ऊ परोक्ष र प्रत्यक्षलाई जान्दछ, अधिपत्यशाली तत्वदर्शी छ ।



# सूरतुत् तलाक़-६५




सूरतुत् तलाक़ मदनी हो, यसमा १२ आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) हे पैगम्बर ! (आफ्नो अनुयायीहरूलाई भनिदिनुस्) जब तिमीले आफ्नो स्वास्नीहरूलाई तलाक दिन चाहन्छौ त उनीहरूको इददतको प्रारम्भमा तलाक़ देऊ, र इददतलाई गन्ने गर, र अल्लाहसित, जो तिम्रो पालनकर्ता हो, डर । उनीहरूलाई उनीहरूको घरहरूबाट ननिकाल र न उनीहरू स्वयं निस्कुन् । हो, यदि तिनीहरूले खुल्ला व्यभिचार गरिन् त कुरा बेग्लै छ । र यी अल्लाहद्वारा निर्धारित सीमाहरू हुन् । र जो अल्लाहका सीमाहरूभन्दा अगाडि बढ्नेछ, त्यसले आफूमाथि नै अत्याचार गर्नेछ । तिमीलाई थाहा छैन, कदाचित यस पश्चात अल्लाहले कुनै नयाँ अवस्थाको सृजना गरिदेओस् ।

يٰۤاَيُّهَا النَّبِيُّ اِذَا طَلَّقْتُمُ النِّسَآءَ فَطَلِّقُوْهُنَّ لِعِدَّتِهِنَّ وَاَحْصُوا الْعِدَّةَ ۚ وَاتَّقُوا اللّٰهَ رَبَّكُمْ ۚ لَا تُخْرِجُوْهُنَّ مِنْۢ بُيُوْتِهِنَّ وَلَا يَخْرُجْنَ اِلَّاۤ اَنْ يَّاْتِيْنَ بِفَاحِشَةٍ مُّبَيِّنَةٍ ؕ وَتِلْكَ حُدُوْدُ اللّٰهِ ؕ وَمَنْ يَّتَعَدَّ حُدُوْدَ اللّٰهِ فَقَدْ ظَلَمَ نَفْسَهٗ ؕ لَا تَدْرِيْ لَعَلَّ اللّٰهَ يُحْدِثُ بَعْدَ ذٰلِكَ اَمْرًا ۝١

२) अनि जब उनीहरू(स्त्रीहरू) आफ्ना निर्धारित इद्दतको नजिक पुग्छिन् भने उनीहरूलाई नियमानुसार आफ्नो निकाहमा रहन देऊ वा दस्तूरको मुताबिक अलग गरिदेऊ,

فَاِذَا بَلَغْنَ اَجَلَهُنَّ فَاَمْسِكُوْهُنَّ بِمَعْرُوْفٍ اَوْ فَارِقُوْهُنَّ بِمَعْرُوْفٍ وَّاَشْهِدُوْا ذَوَيْ عَدْلٍ مِّنْكُمْ وَاَقِيْمُوا الشَّهَادَةَ لِلّٰهِ ؕ ذٰلِكُمْ يُوْعَظُ بِهٖ مَنْ كَانَ يُؤْمِنُ بِاللّٰهِ وَالْيَوْمِ الْاٰخِرِ ؕ وَمَنْ يَّتَّقِ اللّٰهَ يَجْعَلْ لَّهٗ مَخْرَجًا ۝٢

र आफूमध्येबाट दुईजना न्यायप्रिय मानिसहरूलाई साक्षी बनाइहाल र अल्लाहको प्रसन्नता निम्ति ठीक-ठीक गवाही देऊ । यी कुराहरूबाट त्यस व्यक्तिलाई उपदेश गरिन्छ, जसले अल्लाह र परलोकको (आखिरतको) दिनमाथि ईमान राख्दछ । र जो अल्लाहसित डर मान्दछ । अल्लाह उसको लागि उम्कने बाटो सृजना गरिदिनेछ ।

३) र उसलाई यस्तो ठाउँबाट जीविका दिन्छ, जसको उसलाई कल्पना पनि छैन, र जसले अल्लाहमाथि भरोसा गर्दछ, त्यो उसको निम्ति पर्याप्त छ, निश्चय नै अल्लाहले आफ्नो काम पूरा गरेर नै छाड्नेछ । अल्लाहले हरेक कुराको एउटा अनुमान गरिराखेको छ ।

وَيَرْزُقْهُ مِنْ حَيْثُ لَا يَحْتَسِبُ ۚ وَمَنْ يَتَوَكَّلْ عَلَى اللَّهِ
فَهُوَ حَسْبُهُ ۚ إِنَّ اللَّهَ بَالِغُ أَمْرِهِ ۚ قَدْ جَعَلَ اللَّهُ لِكُلِّ
شَيْءٍ قَدْرًا ﴿٣﴾

४) तिम्रो (तलाक दिइएका) स्त्रीहरू जो मासिक धर्मबाट निराश भइसकेका छिन्, यदि तिमीलाई शंका छ भने उनीहरूको इददत् तीन महिना छ, र जसलाई अझै मासिक धर्म आउन थालेको छैन उनीहरूको पनि यहि नै इददत् हो र गर्भवती महिलाहरूको इद्दत उनीहरूको शिशु-प्रसवसम्म छ । जो कोही पनि अल्लाहसित डर मान्ने छ, अल्लाह उसको सबैकाम सजिलो गरिदिनेछ ।

وَاللَّائِي يَئِسْنَ مِنَ الْمَحِيضِ مِنْ نِسَائِكُمْ إِنِ ارْتَبْتُمْ
فَعِدَّتُهُنَّ ثَلَاثَةُ أَشْهُرٍ وَاللَّائِي لَمْ يَحِضْنَ ۚ وَأُولَاتُ
الْأَحْمَالِ أَجَلُهُنَّ أَنْ يَضَعْنَ حَمْلَهُنَّ ۚ وَمَنْ يَتَّقِ اللَّهَ
يَجْعَلْ لَهُ مِنْ أَمْرِهِ يُسْرًا ﴿٤﴾

ذٰلِكَ أَمْرُ اللّٰهِ أَنزَلَهُۥٓ إِلَيْكُمْ ۚ وَمَن يَتَّقِ اللّٰهَ يُكَفِّرْ عَنْهُ سَيِّـَٔاتِهِۦ وَيُعْظِمْ لَهُۥٓ أَجْرًا ۝٥

५) यो अल्लाहको आदेश हो, जुनकि उसले तिमीतिर अवतरित गरेको छ । जो कोही अल्लाहसित डर्नेछ, उसबाट अल्लाहले उसका पापहरू हटाइदिनेछ र उसलाई ठूलो प्रतिफल प्रदान गर्नेछ ।

أَسْكِنُوهُنَّ مِنْ حَيْثُ سَكَنتُم مِّن وُجْدِكُمْ وَلَا تُضَآرُّوهُنَّ لِتُضَيِّقُوا۟ عَلَيْهِنَّ ۚ وَإِن كُنَّ أُو۟لَـٰتِ حَمْلٍ فَأَنفِقُوا۟ عَلَيْهِنَّ حَتَّىٰ يَضَعْنَ حَمْلَهُنَّ ۚ فَإِنْ أَرْضَعْنَ لَكُمْ فَـَٔاتُوهُنَّ أُجُورَهُنَّ ۖ وَأْتَمِرُوا۟ بَيْنَكُم بِمَعْرُوفٍ ۖ وَإِن تَعَاسَرْتُمْ فَسَتُرْضِعُ لَهُۥٓ أُخْرَىٰ ۝٦

६) तिनीहरूलाई (इद्दतको अवस्थामा) तिमीले आफ्नो हैसियत अनुसार त्यसै ठाउँमा राख । जहाँ तिमी बस्छौ, उनीहरूलाई कष्ट दिनको निम्ति उनीहरूलाई हानि नपुऱ्याऊ । यदि उनीहरू गर्भवती छिन् भने उनीहरूमाथि खर्च गरिराख, जबसम्म कि उनीहरूको शिशु-प्रसव नभइहालोस् । अनि यदि तिम्रो भनाई मानेर उनले नै दूध खुवाउँछिन् भने उनीहरूलाई उनको पारिश्रमिक देऊ, र आपसमा राम्रो तरिकाले परस्पर कुराकानीद्वारा कुनै कुरा निश्चित गरिहाल । र यदि तिमीलाई यसमा कुनै कठिनाई हुन्छ भने कुनै अर्कोले उसको निम्ति दूध खुवाइदिनेछे ।

لِيُنفِقْ ذُو سَعَةٍ مِّن سَعَتِهِۦ ۖ وَمَن قُدِرَ عَلَيْهِ رِزْقُهُۥ فَلْيُنفِقْ مِمَّآ ءَاتَىٰهُ اللّٰهُ ۚ لَا يُكَلِّفُ اللّٰهُ نَفْسًا إِلَّا مَآ ءَاتَىٰهَا ۚ سَيَجْعَلُ اللّٰهُ بَعْدَ عُسْرٍ يُسْرًا ۝٧

७) सामर्थ्यवानले आफ्नो क्षमता अनुसार खर्च गर्नुपर्छ र जसको जीविकामा कमी छ, उसलाई चाहिन्छ कि जति अल्लाहले उसलाई प्रदान गरेको छ, त्यस अनुसार खर्च गरोस् । जे-जति प्रदान गरेको छ, त्यसभन्दा बढी अल्लाहले कुनै व्यक्तिमाथि

जिम्मेवारीको बोझ राख्दैन । शीघ्र नै अल्लाहले कठिनाई पश्चात सुगमताको सृष्टि गरिदिनेछ ।

وَكَأَيِّن مِّن قَرْيَةٍ عَتَتْ عَنْ أَمْرِ رَبِّهَا وَرُسُلِهِ فَحَاسَبْنَاهَا حِسَابًا شَدِيدًا وَعَذَّبْنَاهَا عَذَابًا نُّكْرًا ٨

८) र कैयन् यस्ता बस्तीहरू छन् जसका बासिन्दाहरूले आफ्ना पालनकर्ता र उसको रसूलहरूको आदेशबाट अटेरिपना गरे, तब हामीले पनि उनीहरूसँग गम्भीर हिसाब गर्‍यौं र उनीहरूलाई अदृश्य निकृष्ट सजाय दियौं ।

فَذَاقَتْ وَبَالَ أَمْرِهَا وَكَانَ عَاقِبَةُ أَمْرِهَا خُسْرًا ٩

९) अतः उनीहरूले आफ्ना कर्महरूको लागि दण्डको स्वाद चाखिहाले र उनीहरूको लागि परिणाम घाटा नै रह्‍यो ।

أَعَدَّ اللَّهُ لَهُمْ عَذَابًا شَدِيدًا ۖ فَاتَّقُوا اللَّهَ يَا أُولِي الْأَلْبَابِ الَّذِينَ آمَنُوا ۚ قَدْ أَنزَلَ اللَّهُ إِلَيْكُمْ ذِكْرًا ١٠

१०) अल्लाहले उनीहरूको निम्ति कठोर यातना तयार गरेको छ, तसर्थ हे बुद्धिवाला ईमानवालाहरू अल्लाहसित डर । अल्लाहले तिमीतिर उपदेश पठाइसकेको छ ।

رَّسُولًا يَتْلُو عَلَيْكُمْ آيَاتِ اللَّهِ مُبَيِّنَاتٍ لِّيُخْرِجَ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ مِنَ الظُّلُمَاتِ إِلَى النُّورِ ۚ وَمَن يُؤْمِن بِاللَّهِ وَيَعْمَلْ صَالِحًا يُدْخِلْهُ جَنَّاتٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ قَدْ أَحْسَنَ اللَّهُ لَهُ رِزْقًا ١١

११) अर्थात पैगम्बर जसले तिम्रो सामु अल्लाहका स्पष्ट आयतहरू पढेर सुनाउँछन्, ताकि जसले ईमान ल्याउँछन् र असल कर्म गर्दछन् उनीहरूलाई अँध्यारोबाट निकाली उज्यालो तिर ल्याओस् र जुन व्यक्तिले अल्लाहमाथि ईमान ल्याउँछ र असल कर्म गर्नेछ उनीहरूलाई अल्लाहले स्वर्गका यस्ता बागहरूमा प्रविष्ट गर्नेछ, जस मुनि नहरहरू

बगिराखेका छन्, सधैं त्यसमा रहनेछन् । निःसंदेह अल्लाहले उनीहरूको निम्ति उत्तम जीविका प्रदान गरिराखेको छ ।

اَللّٰهُ الَّذِیْ خَلَقَ سَبْعَ سَمٰوٰتٍ وَّمِنَ الْاَرْضِ مِثْلَهُنَّ ؕ یَتَنَزَّلُ الْاَمْرُ بَیْنَهُنَّ لِتَعْلَمُوْۤا اَنَّ اللّٰهَ عَلٰی كُلِّ شَیْءٍ قَدِیْرٌ ۙ۬ وَّاَنَّ اللّٰهَ قَدْ اَحَاطَ بِكُلِّ شَیْءٍ عِلْمًا ﴿۱۲﴾

१२) अल्लाह नै त हो जसले सात आकाशहरू सृष्टि गऱ्यो र उनीहरूकै सादृश्य धरती पनि, उसको आदेश उनको बीचमा अवतरित हुन्छन्, ताकि तिमीहरूले जानिहाल कि अल्लाह हरेक कुरामा सामर्थ्य सम्पन्न छ, र यो कि अल्लाहले सबै कुरालाई आफ्नो ज्ञानको घेरामा लिई राखेको छ ।



# सूरतुत्तहरीम-६६



सूरतुत्तहरीम मदनी हो, यसमा १२ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

يَاَيُّهَا النَّبِيُّ لِمَ تُحَرِّمُ مَآ اَحَلَّ اللّٰهُ لَكَ ۚ تَبْتَغِيْ مَرْضَاتَ اَزْوَاجِكَ ۗ وَاللّٰهُ غَفُوْرٌ رَّحِيْمٌ ①

१) हे नबी ! जुन कुरोलाई तपाईको निम्ति अल्लाहले बैध ठहराएको छ, त्यसलाई तपाईले किन अवैध गर्नु हुन्छ ? के तपाईले आफ्नो पत्नीहरूको सहमति लिन चाहनुहुन्छ ? र अल्लाह बडो क्षमाशील, अत्यन्त दयावान छ ।

قَدْ فَرَضَ اللّٰهُ لَكُمْ تَحِلَّةَ اَيْمَانِكُمْ ۚ وَاللّٰهُ مَوْلٰىكُمْ ۚ وَهُوَ الْعَلِيْمُ الْحَكِيْمُ ②

२) अल्लाहले तिमीहरूलाई तिम्रा शपथहरूको उम्कने उपाय निर्धारित गरिदिएको छ र अल्लाह नै संरक्षक छ र ऊ सर्वज्ञ र अत्यन्त तत्वदर्शी छ ।

وَاِذْ اَسَرَّ النَّبِيُّ اِلٰى بَعْضِ اَزْوَاجِهٖ حَدِيْثًا ۚ فَلَمَّا نَبَّاَتْ بِهٖ وَاَظْهَرَهُ اللّٰهُ عَلَيْهِ عَرَّفَ بَعْضَهٗ وَاَعْرَضَ عَنْۢ بَعْضٍ ۚ فَلَمَّا نَبَّاَهَا بِهٖ قَالَتْ مَنْ اَنْۢبَاَكَ هٰذَا ۗ قَالَ نَبَّاَنِيَ الْعَلِيْمُ الْخَبِيْرُ ③

३) र स्मरण गर जब पैगम्बरले आफ्नो एउटी पत्नीसित एउटा रहस्यको कुरा गरे तर जब उसले उसलाई प्रचार गरिदियो, र अल्लाहले यसबाट नबीलाई सावधान गराइदियो तब नबीले यस पत्नीलाई त्यो कुरा आँशिक भने र केही भनेनन्, अनि जब उनले तिनलाई बताए त सोध्न थालिन् कि तपाईलाई यो कसले भन्यो । उनले भने कि "मलाई उसले खबर गरेको छ, जो सबै जान्नेवाला र खबर राख्नेवाला छ ।"

إِنْ تَتُوبَآ إِلَى اللّٰهِ فَقَدْ صَغَتْ قُلُوبُكُمَا ۚ وَإِنْ تَظٰهَرَا عَلَيْهِ فَإِنَّ اللّٰهَ هُوَ مَوْلٰىهُ وَجِبْرِيلُ وَصٰلِحُ الْمُؤْمِنِينَ ۚ وَالْمَلٰٓئِكَةُ بَعْدَ ذٰلِكَ ظَهِيرٌ ④

४) (हे नबीका दुवै पत्नीहरू) यदि तिमी दुवै अल्लाह सामु तौबा गर्दछौ, भने राम्रो छ किनकि निःसन्देह तिम्रा हृदयहरू झुकिसकेछन् र यदि पैग़म्बर बिरुद्ध तिमीहरू एक आपसमा सहयोग गर्नेछौ भने, अल्लाह उसको संरक्षक छ, र जिब्रील र नेक ईमानवालाहरू पनि, र फरिश्ताहरू पनि उसको सहायता गर्ने छन् ।

عَسٰى رَبُّهٗٓ إِنْ طَلَّقَكُنَّ أَنْ يُّبْدِلَهٗٓ أَزْوٰجًا خَيْرًا مِّنْكُنَّ مُسْلِمٰتٍ مُّؤْمِنٰتٍ قٰنِتٰتٍ تٰٓئِبٰتٍ عٰبِدٰتٍ سٰٓئِحٰتٍ ثَيِّبٰتٍ وَّأَبْكَارًا ⑤

५) र यदि पैगम्बरले तिमीलाई तलाक दिइहालुन् भने यस कुराको धेरै सम्भावना छ कि उनको पालनकर्ताले तिम्रो सट्टामा उनलाई तिमीभन्दा राम्री पत्नीहरू प्रदान गर्नेछ जो मुस्लिम ईमानवाली, आज्ञाकारीणी, तौबा गर्ने, इबादत गर्नेवाली, व्रत बस्नेवाली, विधवा र कुमारीहरू पनि हुने छिन् ।

يٰٓأَيُّهَا الَّذِينَ اٰمَنُوا قُوٓا أَنْفُسَكُمْ وَأَهْلِيكُمْ نَارًا وَّقُودُهَا النَّاسُ وَالْحِجَارَةُ عَلَيْهَا مَلٰٓئِكَةٌ غِلَاظٌ شِدَادٌ لَّا يَعْصُونَ اللّٰهَ مَآ أَمَرَهُمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ⑥

६) हे मोमिनहरू ! स्वयं आफूलाई र आफ्ना घरवालाहरूलाई त्यस आगोबाट बचाऊ, जसको ईन्धन मनुष्य र पत्थर हुनेछन्, जसको लागि कठोर स्वभावका, यस्ता बलशाली फरिश्ताहरू नियुक्त हुनेछन् जसले त्यसमा अल्लाहको अवज्ञा गर्दैनन् बरु जे आदेश पनि दिइन्छ, त्यसलाई कार्यान्वित गर्दछन् ।

يٰٓأَيُّهَا الَّذِينَ كَفَرُوا لَا تَعْتَذِرُوا الْيَوْمَ ۖ إِنَّمَا تُجْزَوْنَ مَا كُنْتُمْ تَعْمَلُونَ ⑦

७) काफिरहरू हो ! आज तिमीहरू बहानाहरू नबनाऊ । मात्र तिमीले

गर्दै आएका कार्यहरूको प्रतिफल तिमीहरूलाई दिइँदैछ ।

८) हे मोमिनहरू ! अल्लाहको अगाडि तिमीहरूले सत्य पवित्र हृदयले क्षमा याचना गर, आशा छ कि उसले तिम्रा पापहरू तिमीबाट हटाइदिनेछ र तिमीलाई स्वर्गका बागहरूमा, जसमुनि नहरहरू बगरिराखेका छन्, प्रविष्ट गराउनेछ । त्यसदिन अल्लाहले पैगम्बरलाई र ती मानिसहरूलाई, जसले उनका साथ दिएका छन्, निराश गर्ने छैन, (बरु) उनको चमक उनको अगाडि र दायाँतिर (प्रकाश पार्दै) हिंडिरहेको हुनेछ र उनीहरू अल्लाहसित विन्ती गर्नेछन् कि हे पालनकर्ता ! हाम्रा प्रकाश हाम्रो निम्ति पूरा गर र हामीलाई क्षमा गर । निःसन्देह तिमी, प्रत्येक कुरामाथि सामर्थ्यवान छौ ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا تُوبُوٓا إِلَى ٱللَّهِ تَوْبَةً نَّصُوحًا ۖ عَسَىٰ رَبُّكُمْ أَن يُكَفِّرَ عَنكُمْ سَيِّـَٔاتِكُمْ وَيُدْخِلَكُمْ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ يَوْمَ لَا يُخْزِى ٱللَّهُ ٱلنَّبِىَّ وَٱلَّذِينَ ءَامَنُوا مَعَهُۥ ۖ نُورُهُمْ يَسْعَىٰ بَيْنَ أَيْدِيهِمْ وَبِأَيْمَٰنِهِمْ يَقُولُونَ رَبَّنَآ أَتْمِمْ لَنَا نُورَنَا وَٱغْفِرْ لَنَآ ۖ إِنَّكَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ٨

९) हे पैगम्बर ! काफिरहरू र मुनाफिकहरूसित लड र उनीहरूमाथि कडाई गर । उनीहरूको बास्स्थान नर्क हो र त्योा साह्रै नराम्रो ठाउँ हो ।

يَٰٓأَيُّهَا ٱلنَّبِىُّ جَٰهِدِ ٱلْكُفَّارَ وَٱلْمُنَٰفِقِينَ وَٱغْلُظْ عَلَيْهِمْ ۚ وَمَأْوَىٰهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ٩

१०) अल्लाहले काफिरहरूको निम्ति "नूह(अ.) की" पत्नी र "लूत(अ.)की" पत्नीको उदाहरण वर्णन गरेको छ । दुवै हाम्रा असल भक्तहरू मध्ये दुईवटा भक्तहरूको घरमा थिइन्,

ضَرَبَ ٱللَّهُ مَثَلًا لِّلَّذِينَ كَفَرُوا ٱمْرَأَتَ نُوحٍ وَٱمْرَأَتَ لُوطٍ ۖ كَانَتَا تَحْتَ عَبْدَيْنِ مِنْ عِبَادِنَا صَٰلِحَيْنِ فَخَانَتَاهُمَا فَلَمْ يُغْنِيَا عَنْهُمَا مِنَ ٱللَّهِ شَيْـًٔا وَقِيلَ ٱدْخُلَا ٱلنَّارَ مَعَ ٱلدَّٰخِلِينَ ١٠

र दुवैले उनीप्रति विश्वासघात गरिन्, तब ती असल भक्तहरूले उनीहरूलाई अल्लाहको सजायबाट बचाउन सकेनन्, र भनियो कि (हे स्त्रीहरू) प्रवेश गर्नेवालाको साथमा तिमी दुवै पनि नर्कमा प्रविष्ट भइहाल ।

११) र मोमिनहरूको निम्ति अल्लाहले "फिरऔनकी" पत्नीको उदाहरण वर्णन गरेको छ, जब कि उनले अल्लाहसित प्रार्थना गरिन् कि हे मेरो पालनकर्ता ! मेरो निम्ति स्वर्गमा आफ्नो नजिक एउटा घर बनाऊ र मलाई फिरऔन र उसको कर्मबाट छुटकारा देऊ, र अत्याचारीहरूबाट मलाई मुक्त गर ।

وَضَرَبَ اللّٰهُ مَثَلًا لِّلَّذِيْنَ اٰمَنُوا امْرَاَتَ فِرْعَوْنَ ۘ اِذْ قَالَتْ رَبِّ ابْنِ لِيْ عِنْدَكَ بَيْتًا فِي الْجَنَّةِ وَنَجِّنِيْ مِنْ فِرْعَوْنَ وَعَمَلِهٖ وَنَجِّنِيْ مِنَ الْقَوْمِ الظّٰلِمِيْنَ ۙ﴿۱۱﴾

१२) र (अर्को) इम्रानकि छोरी "मरियमको" दृष्टान्त बयान गऱ्यो जसले आफ्नो सतित्वको रक्षा गरिन्, फेरि हामीले त्यस स्त्रीभित्र आफ्नो तरफबाट रूह फूँकिदियौ, र त्यसले आफ्नो पालनकर्ताको कलाम(वाणी) र उसको किताबहरूलाई सत्य ठान्दथिइन्, र उनी उपासकहरू मध्येकी थिइन् ।

وَمَرْيَمَ ابْنَتَ عِمْرٰنَ الَّتِيْٓ اَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيْهِ مِنْ رُّوْحِنَا وَصَدَّقَتْ بِكَلِمٰتِ رَبِّهَا وَكُتُبِهٖ وَكَانَتْ مِنَ الْقٰنِتِيْنَ ﴿۱۲﴾



# सूरतुल् मुल्क-६७




सूरतुल् मुल्क मक्की हो, यसमा ३० आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

تَبٰرَكَ الَّذِيْ بِيَدِهِ الْمُلْكُ ۫ وَهُوَ عَلٰى كُلِّ شَيْءٍ قَدِيْرُ ۙ﴿١﴾

१) त्यो जसको हातमा राज्यसत्ता छ, बडो कल्याणकारी छ, र जो हरेक कुरामा सामर्थ्यवान छ ।

الَّذِيْ خَلَقَ الْمَوْتَ وَالْحَيٰوةَ لِيَبْلُوَكُمْ اَيُّكُمْ اَحْسَنُ عَمَلًا ۭ وَهُوَ الْعَزِيْزُ الْغَفُوْرُ ۙ﴿٢﴾

२) जसले मृत्यु र जीवनलाई यसकारण सृष्टि गरेको छ, कि तिम्रो परीक्षा गरोस् । कि तिमीमध्ये राम्रो काम को गर्दछ । र ऊ अधिपत्यशाली र क्षमाशील छ ।

الَّذِيْ خَلَقَ سَبْعَ سَمٰوٰتٍ طِبَاقًا ۭ مَا تَرٰى فِيْ خَلْقِ الرَّحْمٰنِ مِنْ تَفٰوُتٍ ۭ فَارْجِعِ الْبَصَرَ ۙ هَلْ تَرٰى مِنْ فُطُوْرٍ ﴿٣﴾

३) जसले माथि सातवटा आकाशहरू बनायो त हेर्नेवाला अल्लाह-रहमानको रचनामा कुनै विसंगति देख्ने छैन । दोस्रो पटक दृष्टि उठाएर हेर के कुनै चिरा दृष्टिगोचर हुन्छ ?

ثُمَّ ارْجِعِ الْبَصَرَ كَرَّتَيْنِ يَنْقَلِبْ اِلَيْكَ الْبَصَرُ خَاسِئًا وَّهُوَ حَسِيْرٌ ﴿٤﴾

४) फेरि दोहऱ्याएर दुई-दुई पटक देखिलेऊ, तिम्रो दृष्टि तिम्रो तर्फ अपमानित र कमजोर भएर फर्की आउनेछ ।

وَلَقَدْ زَيَّنَّا السَّمَاۗءَ الدُّنْيَا بِمَصَابِيْحَ وَجَعَلْنٰهَا رُجُوْمًا لِّلشَّيٰطِيْنِ وَاَعْتَدْنَا لَهُمْ عَذَابَ السَّعِيْرِ ﴿٥﴾

५) निःसन्देह हामीले आकाशलाई संसारको प्रकाशका लागि भव्य दीपबाट सजायौं, र उनीहरूलाई शैतानलाई हान्ने माध्यम बनायौं, र शैतानहरूको लागि हामीले नर्कको सजाय तयार गरिराखेका छौं ।

وَلِلَّذِينَ كَفَرُوا بِرَبِّهِمْ عَذَابُ جَهَنَّمَ ۖ وَبِئْسَ الْمَصِيرُ ⑥

६) र जसले आफ्नो पालनकर्तासित कुफ्र गरे, उनीहरूको निम्ति नर्कको यातना छ, र त्यो धेरै नराम्रो ठाउँ हो ।

إِذَا أُلْقُوا فِيهَا سَمِعُوا لَهَا شَهِيقًا وَهِيَ تَفُورُ ⑦

७) जब त्यसमा यिनीहरू हालिनेछन्, तब त्यसको चित्कारको आवाज सुन्ने छन् र त्यसले भडकी रहेको हुनेछ ।

تَكَادُ تَمَيَّزُ مِنَ الْغَيْظِ ۖ كُلَّمَا أُلْقِيَ فِيهَا فَوْجٌ سَأَلَهُمْ خَزَنَتُهَا أَلَمْ يَأْتِكُمْ نَذِيرٌ ⑧

८) यस्तो लाग्छ कि क्रोधले च्याती जान्छ जब यसमा कुनै समूह हालिनेछ ऊ सित नर्कका द्वारपालेहरूले सोध्नेछन्, "के तिम्रो पासमा कोही सावधान गर्नेवाला आएन ?"

قَالُوا بَلَىٰ قَدْ جَاءَنَا نَذِيرٌ فَكَذَّبْنَا وَقُلْنَا مَا نَزَّلَ اللَّهُ مِنْ شَيْءٍ إِنْ أَنْتُمْ إِلَّا فِي ضَلَالٍ كَبِيرٍ ⑨

९) उनीहरूले भन्नेछन्: (किन होइन), अवश्य सावधान गर्नेवाला आएको थियो । तर हामीले उसलाई असत्य ठहरायौं र भन्यौं कि अल्लाहले त कुनै कुरा अवतरित गरेकै छैन । तिमी त ठूलो भ्रममा परिराखेका छौ ।

وَقَالُوا لَوْ كُنَّا نَسْمَعُ أَوْ نَعْقِلُ مَا كُنَّا فِي أَصْحَابِ السَّعِيرِ ⑩

१०) र भन्नेछन् : यदि हामीले सुन्ने र बुझ्ने भएको भए नारकीहरू मध्येका हुने थिएनौं ।

فَاعْتَرَفُوا بِذَنْبِهِمْ فَسُحْقًا لِأَصْحَابِ السَّعِيرِ ⑪

११) यसप्रकार उनीहरूले आफ्ना अपराधहरूलाई स्वीकार गर्नेछन् । तसर्थ अब यी नारकीहरू टाढा रहुन् ।

إِنَّ الَّذِينَ يَخْشَوْنَ رَبَّهُمْ بِالْغَيْبِ لَهُمْ مَغْفِرَةٌ وَأَجْرٌ كَبِيرٌ ⑫

१२) निःसंदेह जुन मानिसहरू परोक्षमा आफ्नो पालनकर्तासित डरने गर्दछन् । उनीहरूको निम्ति क्षमा र ठूलो प्रतिफल छ ।

१३) तिमीहरूले कुरा लुकाएर भन वा प्रकट रूपले, उसले हृदयका रहस्यहरू समेत जान्दछ ।

وَأَسِرُّوا قَوْلَكُمْ أَوِ اجْهَرُوا بِهِ ۖ إِنَّهُ عَلِيمٌ بِذَاتِ
الصُّدُورِ ﴿١٣﴾

१४) के उसले जान्ने छैन जसले सृष्टि गरेको छ ? जबकि ऊ सूक्ष्मदर्शी र हरेक कुराबाट अवगत पनि छ ।

أَلَا يَعْلَمُ مَنْ خَلَقَ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴿١٤﴾

१५) उही त हो जसले तिम्रो निम्ति धरतीलाई नरम र अधीनस्थ गऱ्यो । ताकि तिमीले उसका बाटाहरूमा हिंड्डुल गर्ने गर र अल्लाहद्धारा प्रदान गरिएको जीविका उपभोग गर, र तिमीले उसैको पासमा दोस्रोपटक जीवित भएर जानुपर्नेछ ।

هُوَ الَّذِي جَعَلَ لَكُمُ الْأَرْضَ ذَلُولًا فَامْشُوا
فِي مَنَاكِبِهَا وَكُلُوا مِنْ رِزْقِهِ ۖ وَإِلَيْهِ النُّشُورُ ﴿١٥﴾

१६) के तिमी यस कुराबाट निश्चिन्त छौ कि आकाशवालाले तिमीलाई धरतीमा गाडिदेओस् अनि त्यसबेला पृथ्वीमा कम्पन हुनथालोस् ।

ءَأَمِنْتُمْ مَنْ فِي السَّمَاءِ أَنْ يَخْسِفَ بِكُمُ
الْأَرْضَ فَإِذَا هِيَ تَمُورُ ﴿١٦﴾

१७) वा के तिमी यस कुराबाट निश्चिन्त छौ कि आकाशवालाले तिमीमाथि पथरको वर्षा गरिदेओस् ? अनि तिमीलाई थाहा भइहाल्नेछ कि मेरो चेतावनी कस्तो थियो ।

أَمْ أَمِنْتُمْ مَنْ فِي السَّمَاءِ أَنْ يُرْسِلَ عَلَيْكُمْ
حَاصِبًا ۖ فَسَتَعْلَمُونَ كَيْفَ نَذِيرِ ﴿١٧﴾

१८) र यिनीभन्दा पहिलाका मानिसहरूले पनि झूठा ठहराएका थिए, अत: हेरिहाल कि उनीमाथि मेरो यातना कस्तो भयो ?

وَلَقَدْ كَذَّبَ الَّذِينَ مِنْ قَبْلِهِمْ فَكَيْفَ كَانَ
نَكِيرِ ﴿١٨﴾

१९) के यिनीहरूले आफ्ना टाउकाहरूमाथि पखेटा फैलाएर वा खुम्च्याएर

أَوَلَمْ يَرَوْا إِلَى الطَّيْرِ فَوْقَهُمْ صَافَّاتٍ وَيَقْبِضْنَ ۚ
مَا يُمْسِكُهُنَّ إِلَّا الرَّحْمَٰنُ ۚ إِنَّهُ بِكُلِّ شَيْءٍ بَصِيرٌ ﴿١٩﴾

उडिराखेका पंक्षिहरूलाई देखेनन् ? अल्लाहले नै उनीहरूलाई हावामा थामी राखेको हुन्छ । निःसन्देह त्यसले हरेक कुरालाई देखिराखेको छ ।

२०) अल्लाह बाहेक तिम्रो कुन चाहिं सेना छ, जसले तिम्रो सहायता गर्न सकोस् । काफिरहरू त भ्रममा छन् ।

أَمَّنْ هَٰذَا الَّذِي هُوَ جُندٌ لَّكُمْ يَنصُرُكُم مِّن دُونِ الرَّحْمَٰنِ ۚ إِنِ الْكَافِرُونَ إِلَّا فِي غُرُورٍ ﴿٢٠﴾

२१) यदि अल्लाहले आफ्नो जीविका बन्द गरिदिन्छ भने भन त्यो को हो जसले तिमीलाई जीविका दिन्छ ? तर यिनीहरू अटेरीपना र घृणामा अल्झेका छन् ।

أَمَّنْ هَٰذَا الَّذِي يَرْزُقُكُمْ إِنْ أَمْسَكَ رِزْقَهُ ۚ بَل لَّجُّوا فِي عُتُوٍّ وَنُفُورٍ ﴿٢١﴾

२२) त्यो व्यक्ति बढी मार्गदर्शन प्राप्त गरेको छ जो टाउको टेकेर हिँडछ वा त्यो व्यक्ति जसले सोभ्को (खुट्टा टेकेर) बाटोमा हिंड्छ ?

أَفَمَن يَمْشِي مُكِبًّا عَلَىٰ وَجْهِهِ أَهْدَىٰ أَمَّن يَمْشِي سَوِيًّا عَلَىٰ صِرَاطٍ مُّسْتَقِيمٍ ﴿٢٢﴾

२३) भनिदिनुस् त्यो अल्लाह नै हो, जसले तिमीलाई पैदा गऱ्यो र तिम्रा कान, आँखा र हृदयको रचना गऱ्यो तर तिमीले कम कृतज्ञता देखाउँछौ ।

قُلْ هُوَ الَّذِي أَنشَأَكُمْ وَجَعَلَ لَكُمُ السَّمْعَ وَالْأَبْصَارَ وَالْأَفْئِدَةَ ۖ قَلِيلًا مَّا تَشْكُرُونَ ﴿٢٣﴾

२४) भनिदिनुस् कि उही हो, जसले तिमीलाई धरतीमा फैलायो र उसैको सामु तिमीहरू एकत्रित गरिनेछौ ।

قُلْ هُوَ الَّذِي ذَرَأَكُمْ فِي الْأَرْضِ وَإِلَيْهِ تُحْشَرُونَ ﴿٢٤﴾

२५) काफिरहरूले भन्दछन्: कि यदि तिमी साँचो हौ भने त्यो वाचा कहिले हुनेछ बताऊ ?

وَيَقُولُونَ مَتَىٰ هَٰذَا الْوَعْدُ إِن كُنتُمْ صَادِقِينَ ﴿٢٥﴾

قُلْ إِنَّمَا الْعِلْمُ عِندَ اللَّهِ وَإِنَّمَا أَنَا نَذِيرٌ مُّبِينٌ ﴿٢٦﴾

२६) तपाई भनिदिनुस् कि यसको ज्ञान त मात्र अल्लाहलाई नै छ र म स्पष्ट रूपले डर सुनाउनेवाला हूँ ।

فَلَمَّا رَأَوْهُ زُلْفَةً سِيئَتْ وُجُوهُ الَّذِينَ كَفَرُوا وَقِيلَ هَٰذَا الَّذِي كُنتُم بِهِ تَدَّعُونَ ﴿٢٧﴾

२७) जब उनीहरूले त्यस वचालाई नजीकबाट हेर्ने छन् त काफिहरूको अनुहार त्यसबेला बिग्रीहल्नेछ र उनीहरूसित भनिनेछ कि यो त्यही हो जसका तिमीले मांग गर्ने गर्दथ्यौ ।

قُلْ أَرَأَيْتُمْ إِنْ أَهْلَكَنِيَ اللَّهُ وَمَن مَّعِيَ أَوْ رَحِمَنَا فَمَن يُجِيرُ الْكَافِرِينَ مِنْ عَذَابٍ أَلِيمٍ ﴿٢٨﴾

२८) तपाई भनिदिनुस् कि हेर यदि अल्लाहले मलाई र मेरा साथीहरूलाई नष्ट गरिदेओस् वा हामीमाथि दया गरोस्, त को छ जसले काफिरहरूलाई दुःखद यातनाबाट बचाउन सक्दछ ?

قُلْ هُوَ الرَّحْمَٰنُ آمَنَّا بِهِ وَعَلَيْهِ تَوَكَّلْنَا ۖ فَسَتَعْلَمُونَ مَنْ هُوَ فِي ضَلَالٍ مُّبِينٍ ﴿٢٩﴾

२९) तपाई भनिदिनुस् कि उही अल्लाह-रहमान हो, हामीले उसैमाथि ईमान ल्याएका छौं र उसैमाथि भरोसा गर्दछौं । तिमीलाई छिट्टै थाहा भइहाल्ने छ कि खुल्ला मार्ग विचलिनमा को छ ।

قُلْ أَرَأَيْتُمْ إِنْ أَصْبَحَ مَاؤُكُمْ غَوْرًا فَمَن يَأْتِيكُم بِمَاءٍ مَّعِينٍ ﴿٣٠﴾

३०) तपाई भनिदिनुस् कि यो त बताऊ कि यदि तिम्रो (पिउने) पानी सुखिहाल्छ भने को छ जसले तिमीलाई निर्मल जल प्रवाहित गरि दिनेछ ?

# सूरतुल् कलम-६८



सूरतुल् कलम मक्की हो, यसमा ५२ आयतहरू र २ रुकुअहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

نٓ وَالْقَلَمِ وَمَا يَسْطُرُوْنَ ①

१) नून, कसम छ कलमको र त्यसको जुन कुरो तिनीहरू (फरिश्ताहरू) लेख्दछन् ।

مَآ اَنْتَ بِنِعْمَةِ رَبِّكَ بِمَجْنُوْنٍ ②

२) कि (हे मोहम्मद) तपाई आफ्नो पालनकर्ताको अनुकम्पाबाट बउलाहा होइन ।

وَاِنَّ لَكَ لَاَجْرًا غَيْرَ مَمْنُوْنٍ ③

३) र निःसन्देह तपाईको लागि अन्त न हुनेवाला बडो अनुकम्पा छ ।

وَاِنَّكَ لَعَلٰى خُلُقٍ عَظِيْمٍ ④

४) निःसन्देह तपाई उच्च आचरणवाला हुनु हुन्छ ।

فَسَتُبْصِرُ وَيُبْصِرُوْنَ ⑤

५) अब तिमीले देख्नेछौ र यिनीहरूले पनि देखिहाल्नेछन्,

بِاَيِّكُمُ الْمَفْتُوْنُ ⑥

६) कि तिमीमध्येबाट को भ्रमित भएको छ ।

اِنَّ رَبَّكَ هُوَ اَعْلَمُ بِمَنْ ضَلَّ عَنْ سَبِيْلِهٖ ۖ وَهُوَ اَعْلَمُ بِالْمُهْتَدِيْنَ ⑦

७) निःसंदेह तिम्रो पालनकर्ताले उसलाई राम्ररी जान्दछ, जो आफ्नो बाटोबाट विचलित भएका छन् र उनीहरूलाई पनि राम्ररी जान्दछ, जो सोझो मार्ग हिडीराखेका छन्,

فَلَا تُطِعِ الْمُكَذِّبِيْنَ ⑧

८) तसर्थ तिमीले असत्य ठहराउनेहरूको भनाई नमान्नु ।

وَدُّوا لَوْ تُدْهِنُ فَيُدْهِنُونَ ﴿٩﴾

९) तिनीहरूले चाहन्छन् कि तिमी अली नरम भइहाल । अनि यिनीहरू नरम भइहाल्नेछन् ।

وَلَا تُطِعْ كُلَّ حَلَّافٍ مَّهِينٍ ﴿١٠﴾

१०) र तिमीले कुनै यस्तो व्यक्तिको भनाई नमान्नु जसले धेरै कसम खाई रहन्छ ।

هَمَّازٍ مَّشَّآءٍ بِنَمِيمٍ ﴿١١﴾

११) बदनाम अर्काको दुर्गण वर्णन गर्नेवाला र चुक्ली गर्दै हिड्दछ ।

مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ أَثِيمٍ ﴿١٢﴾

१२) (र जो)राम्रो कुराबाट रोक्नेवाला, सीमाको उल्लंघन गर्नेवाला, ठूलो अपराधी, (हो) ।

عُتُلٍّ بَعْدَ ذَٰلِكَ زَنِيمٍ ﴿١٣﴾

१३) घमण्डी र त्यो पनि जारज ।

أَن كَانَ ذَا مَالٍ وَبَنِينَ ﴿١٤﴾

१४) उसको अटेरीपना मात्र यसकारण छ कि त्यो धनवान र छोराहरूवाला छ,

إِذَا تُتْلَىٰ عَلَيْهِ آيَاتُنَا قَالَ أَسَاطِيرُ الْأَوَّلِينَ ﴿١٥﴾

१५) जब उसका सामु हाम्रा आयतहरू पढेर सुनाइन्छन्, तब भन्छ कि यी त पहिलाका मानिसहरूका कथा हुन्,

سَنَسِمُهُ عَلَى الْخُرْطُومِ ﴿١٦﴾

१६) हामीले पनि (शीघ्र नै) उसको नाकमा दाग लगाउनेछौं ।

إِنَّا بَلَوْنَاهُمْ كَمَا بَلَوْنَا أَصْحَابَ الْجَنَّةِ إِذْ أَقْسَمُوا لَيَصْرِمُنَّهَا مُصْبِحِينَ ﴿١٧﴾

१७) नि:संदेह हामीले उनीहरूको यस्तै प्रकारले परीक्षा लिएका छौं जुन प्रकारले बागवालाहरूको परीक्षा लिएका थियौं, जबकि उनीहरूले कसम खाए कि प्रातः काल हुनासाथ अवश्य त्यस बगैचाका फल टिप्नेछौं ।

وَلَا يَسْتَثْنُونَ ﴿١٨﴾

१८) र "इन्शाअल्लाह"(यदि अल्लहले चाह्यो) भनेनन्,

فَطَافَ عَلَيْهَا طَآئِفٌ مِّن رَّبِّكَ وَهُمْ نَآئِمُونَ ﴿١٩﴾

१९) तसर्थ उनीहरूमाथि उनीहरू सुतिराखेकै बेलामा तिम्रो पालनकर्ताको तर्फबाट एउटा विपदाले चक्कर लगाइहाल्यो ।

فَأَصْبَحَتْ كَالصَّرِيمِ ﴿٢٠﴾

२०) तब त्यो बगैचा यस्तो भइहाल्यो जस्तो कि काटिएको खेती,

فَتَنَادَوْا مُصْبِحِينَ ﴿٢١﴾

२१) जब बिहान भयो तब उनीहरूले एक अर्कालाई पुकार्न थाले,

أَنِ اغْدُوا عَلَىٰ حَرْثِكُمْ إِن كُنتُمْ صَارِمِينَ ﴿٢٢﴾

२२) कि यदि तिमीले फल टिप्नु छ भने आफ्नो खेतीमा बिहानै आइपुग ।

فَانطَلَقُوا وَهُمْ يَتَخَافَتُونَ ﴿٢٣﴾

२३) फेरि तिनीहरू विस्तारै-विस्तारै यो कुरा गर्दै हिंडे ।

أَن لَّا يَدْخُلَنَّهَا الْيَوْمَ عَلَيْكُم مِّسْكِينٌ ﴿٢٤﴾

२४) कि आज यहाँ तिम्रो पासमा कोही गरीब आउन नपाओस्,

وَغَدَوْا عَلَىٰ حَرْدٍ قَادِرِينَ ﴿٢٥﴾

२५) र उनीहरू लम्कदै बिहानै पुगे, कि हामी सामर्थ्यवान हुनेछौं ।

فَلَمَّا رَأَوْهَا قَالُوا إِنَّا لَضَالُّونَ ﴿٢٦﴾

२६) जब उनीहरूले बागलाई देखे त भन्नथाले कि हामी निश्चयनै बाटो बिर्सिसकेका छौं,

بَلْ نَحْنُ مَحْرُومُونَ ﴿٢٧﴾

२७) होइन, होइन बरु हाम्रो भाग्य नै फेरी सक्यो ।

قَالَ أَوْسَطُهُمْ أَلَمْ أَقُل لَّكُمْ لَوْلَا تُسَبِّحُونَ ﴿٢٨﴾

२८) एउटा जुन उनीहरूमध्ये बुद्धिमान थियो उसले भन्यो, के मैले तिमीसित भनेको थिएन कि तिमीले अल्लाहको पवित्रताको वर्णन किन गर्दैनौ ?

قَالُوا سُبْحَانَ رَبِّنَا إِنَّا كُنَّا ظَالِمِينَ ﴿٢٩﴾

२९) तब उनीहरू सबैले भन्नथाले कि हाम्रो पालनकर्ता पवित्र छ, निश्चय नै हामी नै अत्याचारी थियौं,

| | |
|---|---|
| ३०) अनि उनीहरू एक अर्कातिर मुख फर्काइ परस्पर धिक्कार्न थाले, | فَأَقْبَلَ بَعْضُهُمْ عَلَىٰ بَعْضٍ يَتَلَاوَمُونَ ۝٣٠ |
| ३१) भन्न थाले, हाय अफशोच हामी नै हदभन्दा अगाडि गइसकेका थियौं । | قَالُوا يَا وَيْلَنَا إِنَّا كُنَّا طَاغِينَ ۝٣١ |
| ३२) आशा छ कि हाम्रो पालनकर्ताले यसको सट्टा हामीहरूलाई यसभन्दा राम्रो बदला प्रदान गरोस्, हामी त अब आफ्नो पालनकर्ताबाटै आशन्वित हुन्छौं । | عَسَىٰ رَبُّنَا أَن يُبْدِلَنَا خَيْرًا مِّنْهَا إِنَّا إِلَىٰ رَبِّنَا رَاغِبُونَ ۝٣٢ |
| ३३) (हेर) विपदा यस्तै आउँछ र परलोकको विपदा धेरै ठूलो छ, यदि यो कुरा उनीहरूले बुझ्न सक्ने भए । | كَذَٰلِكَ الْعَذَابُ ۖ وَلَعَذَابُ الْآخِرَةِ أَكْبَرُ ۚ لَوْ كَانُوا يَعْلَمُونَ ۝٣٣ |
| ३४) निश्चय नै संयमीहरूका निम्ति उनीहरूका पालनकर्ता कहाँ उपहारवाला स्वर्गहरू छन् । | إِنَّ لِلْمُتَّقِينَ عِندَ رَبِّهِمْ جَنَّاتِ النَّعِيمِ ۝٣٤ |
| ३५) के हामी आज्ञाकारीहरूलाई अपराधीहरू जस्तो गरिदिनेछौं ? | أَفَنَجْعَلُ الْمُسْلِمِينَ كَالْمُجْرِمِينَ ۝٣٥ |
| ३६) तिमीलाई के भएको छ, कस्तो निर्णय गर्दैछौ ? | مَا لَكُمْ كَيْفَ تَحْكُمُونَ ۝٣٦ |
| ३७) के तिम्रो पासमा कुनै किताब छ जसबाट तिमी (यो) पढ्छौ ? | أَمْ لَكُمْ كِتَابٌ فِيهِ تَدْرُسُونَ ۝٣٧ |
| ३८) कि तिमीले रुचाउने कुराहरू त्यसमा होऊन् ? | إِنَّ لَكُمْ فِيهِ لَمَا تَخَيَّرُونَ ۝٣٨ |
| ३९) वा तिमीहरूले हामीसित कुनै शपथ लिएकाछौ ? जुन कयामतका दिनसम्म बाँकी रहनेछ, कि तिम्रो | أَمْ لَكُمْ أَيْمَانٌ عَلَيْنَا بَالِغَةٌ إِلَىٰ يَوْمِ الْقِيَامَةِ ۙ إِنَّ لَكُمْ لَمَا تَحْكُمُونَ ۝٣٩ |

निम्ति त्यो सबै छ जुन तिमीले आफ्नो तर्फबाट फैसला गर्दछौ ।

سَلۡهُمۡ اَيُّهُمۡ بِذٰلِكَ زَعِيۡمٌ ٤٠

४०) उनीहरूसित सोध कि उनीहरूमध्ये यसको जिम्मावाला को हो ?

اَمۡ لَهُمۡ شُرَكَآءُ ۚ فَلۡيَاۡتُوۡا بِشُرَكَآئِهِمۡ اِنۡ كَانُوۡا صٰدِقِيۡنَ ٤١

४१) के (यस भनाईमा) उनका अरु पनि साझेदार छन् ? यदि उनी साँचो छन् भने आफ्नो साझेदारहरूलाई ल्याइ अगाडि उभ्याऊन् ।

يَوۡمَ يُكۡشَفُ عَنۡ سَاقٍ وَّيُدۡعَوۡنَ اِلَى السُّجُوۡدِ فَلَا يَسۡتَطِيۡعُوۡنَ ٤٢

४२) जुन दिन घुँडा खोलि दिइनेछ र उनीहरू सजदाको निम्ति बोलाइने छन्, तब तिनीहरूले सिज्दा गर्नसक्ने छैनन् ।

خَاشِعَةً اَبۡصَارُهُمۡ تَرۡهَقُهُمۡ ذِلَّةٌ ؕ وَقَدۡ كَانُوۡا يُدۡعَوۡنَ اِلَى السُّجُوۡدِ وَهُمۡ سٰلِمُوۡنَ ٤٣

४३) आँखाहरू तल झुकेका हुनेछन्, र उनीमाथि अपमान छाइराखेको हुनेछ । उनीहरूलाई त्यस बेला पनि सजदाको निम्ति बोलाइन्थ्यो जबकि उनीहरू ठीकठाक थिए ।

فَذَرۡنِىۡ وَمَنۡ يُّكَذِّبُ بِهٰذَا الۡحَدِيۡثِ ؕ سَنَسۡتَدۡرِجُهُمۡ مِّنۡ حَيۡثُ لَا يَعۡلَمُوۡنَ ٤٤

४४) अतः तिमीले मलाई र मेरा वाणीलाई झूठा भन्नेहरूलाई छाडिदेऊ । हामीले उनीहरूलाई विस्तारै यस्तो तरीकाले समात्ने छौं कि उनलाई थाहा पनि हुने छैन ।

وَاُمۡلِىۡ لَهُمۡ ؕ اِنَّ كَيۡدِىۡ مَتِيۡنٌ ٤٥

४५) मैले उनलाई मोहलत दिइराख्नेछु, निःसंदेह मेरो योजना धेरै बलियो छ ।

اَمۡ تَسۡـَٔلُهُمۡ اَجۡرًا فَهُمۡ مِّنۡ مَّغۡرَمٍ مُّثۡقَلُوۡنَ ٤٦

४६) के तिमीले उनीहरूसित केही बदला माँगिराखेका छौ कि उनीहरू त्यसको बोझबाट थिचिँदै गइराखेका छन् ।

أَمْ عِندَهُمُ الْغَيْبُ فَهُمْ يَكْتُبُونَ ﴿٤٧﴾

४७) वा के उनीहरूको पासमा परोक्षको ज्ञान छ जसलाई उनी लेख्दै गएका छन्,

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تَكُن كَصَاحِبِ الْحُوتِ إِذْ نَادَىٰ وَهُوَ مَكْظُومٌ ﴿٤٨﴾

४८) अतः आफ्नो पालनकर्ताको आदेशलाई तपाईले धैर्यसित प्रतिक्षा गर्नुस् र माछावाला जस्तै नहुनु, कि उनले गहिरो दुःखको अवस्थामा प्रार्थना गरेका थिए ।

لَّوْلَا أَن تَدَارَكَهُ نِعْمَةٌ مِّن رَّبِّهِ لَنُبِذَ بِالْعَرَاءِ وَهُوَ مَذْمُومٌ ﴿٤٩﴾

४९) यदि उनको साथमा उनको पालनकर्ताको अनुकम्पा नभएको भए उनी खुल्ला मैदानमा फ्याँकिने थिए, र उनको अवस्था नराम्रो हुने थियो ।

فَاجْتَبَاهُ رَبُّهُ فَجَعَلَهُ مِنَ الصَّالِحِينَ ﴿٥٠﴾

५०) अन्ततः उनको पालनकर्ताले फेरि उनलाई रोजिहाल्यो र उनलाई राम्रा मानिसहरूमा शम्मिलित गरिदियो ।

وَإِن يَكَادُ الَّذِينَ كَفَرُوا لَيُزْلِقُونَكَ بِأَبْصَارِهِمْ لَمَّا سَمِعُوا الذِّكْرَ وَيَقُولُونَ إِنَّهُ لَمَجْنُونٌ ﴿٥١﴾

५१) र नजिक छ कि काफिरहरूले आफ्नो तीव्र दृष्टिबाट तपाईलाई चिप्ल्याई दिनेछन्, जब उनी "कुरआन" सुन्दछन् र भनिदिन्छन् कि यिनी त अवश्य दिवाना छन् ।

وَمَا هُوَ إِلَّا ذِكْرٌ لِّلْعَالَمِينَ ﴿٥٢﴾

५२) वास्तवमा यो (कुरआन) त सबै संसारवालाहरूको निम्ति पूरै उपदेश हो ।



# सूरतुल् हाक़्क़ः -६९



सूरतुल् हाक़्क़ा मक्की हो, यसमा ५२ आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

१) वास्तवमा भएर नै छाड्नेवाला,

ٱلۡحَآقَّةُ ①

२) प्रमाणित हुने वाला के हो ?

مَا ٱلۡحَآقَّةُ ②

३) र तिमीलाई के थाहा छ कि त्यो वास्तविक प्रमाणित हुनेवाला के हो ?

وَمَآ أَدۡرَىٰكَ مَا ٱلۡحَآقَّةُ ③

४) त्यस ठूलो स्वरको कराउने गड्गडाहट वालालाई "समूद" र "आद" (दुवै) ले असत्य मानेका थिए ।

كَذَّبَتۡ ثَمُودُ وَعَادُۢ بِٱلۡقَارِعَةِ ④

५) जसको परिणाममा "समूद"लाई भयंकर चटयाङ्गबाट नष्ट गरियो ।

فَأَمَّا ثَمُودُ فَأُهۡلِكُواْ بِٱلطَّاغِيَةِ ⑤

६) र "आद" ठूलो तीव्र हुरीबाट समाप्त गरिए ।

وَأَمَّا عَادٞ فَأُهۡلِكُواْ بِرِيحٖ صَرۡصَرٍ عَاتِيَةٖ ⑥

७) जसलाई अल्लाहले सात रात र आठ दिनसम्म निरन्तर उनीहरूमाथि लगाएको थियो तब तिमीले उनीहरूलाई भूइँमा यसरी लडेको अवस्थामा देख्यौ जस्तो कि खजूरका खोक्रा बोटहरू ।

سَخَّرَهَا عَلَيۡهِمۡ سَبۡعَ لَيَالٖ وَثَمَٰنِيَةَ أَيَّامٍ حُسُومٗاۖ فَتَرَى ٱلۡقَوۡمَ فِيهَا صَرۡعَىٰ كَأَنَّهُمۡ أَعۡجَازُ نَخۡلٍ خَاوِيَةٖ ⑦

८) के तिमी उनीहरूमध्ये कोहीलाई पनि शेष देखिरहेका छौ ?

فَهَلۡ تَرَىٰ لَهُم مِّنۢ بَاقِيَةٖ ⑧

९) "फिरऔन" उसभन्दा पहिलाका मानिसहरू र जसको गाउँ बस्तीहरू

وَجَآءَ فِرۡعَوۡنُ وَمَن قَبۡلَهُۥ وَٱلۡمُؤۡتَفِكَٰتُ بِٱلۡخَاطِئَةِ ⑨

उलट पलट भए, उनीहरूले पनि अपराध गर्दथे ।

فَعَصَوْا رَسُولَ رَبِّهِمْ فَأَخَذَهُمْ أَخْذَةً رَّابِيَةً ﴿١٠﴾

१०) र उनीहरूले आफ्ना पालनकर्ताको पैगम्बरको अवज्ञा गरे, तब अल्लाहले उनलाई पनि कठोर पकडमा लिइहाल्यो ।

إِنَّا لَمَّا طَغَا الْمَاءُ حَمَلْنَاكُمْ فِي الْجَارِيَةِ ﴿١١﴾

११) जब पानीमा हलचल आयो तब त्यस बेला हामीले तिमीलाई नौकामा सवार गरायौं ।

لِنَجْعَلَهَا لَكُمْ تَذْكِرَةً وَتَعِيَهَا أُذُنٌ وَاعِيَةٌ ﴿١٢﴾

१२) ताकि त्यसलाई तिम्रो निम्ति शिक्षा बनाइदिऔं र यादगर्ने कानले सुरक्षित राखुन् ।

فَإِذَا نُفِخَ فِي الصُّورِ نَفْخَةٌ وَاحِدَةٌ ﴿١٣﴾

१३) तसर्थ जब सूरमा एकफूँक फूँकिनेछ,

وَحُمِلَتِ الْأَرْضُ وَالْجِبَالُ فَدُكَّتَا دَكَّةً وَاحِدَةً ﴿١٤﴾

१४) र धरती र पहाड दुवै उठाइनेछन्, र एकैचोटीबाट क्षतविक्षत गरिनेछन् ।

فَيَوْمَئِذٍ وَقَعَتِ الْوَاقِعَةُ ﴿١٥﴾

१५) त त्यसदिन घटित हुनेवाला कयामत भइहाल्ने छ ।

وَانشَقَّتِ السَّمَاءُ فَهِيَ يَوْمَئِذٍ وَاهِيَةٌ ﴿١٦﴾

१६) र आकाश फाटिने छ अनि त्यो त्यसदिन एकदम कमजोर भइहाल्नेछ ।

وَالْمَلَكُ عَلَىٰ أَرْجَائِهَا ۚ وَيَحْمِلُ عَرْشَ رَبِّكَ فَوْقَهُمْ يَوْمَئِذٍ ثَمَانِيَةٌ ﴿١٧﴾

१७) र फरिश्ताहरू उसको किनारमा हुनेछन् र त्यसदिन तिम्रो पालनकर्ताको सिंहासनलाई आठ फरिश्ताहरूले आफूमाथि उचालेका हुनेछन् ।

يَوْمَئِذٍ تُعْرَضُونَ لَا تَخْفَىٰ مِنكُمْ خَافِيَةٌ ﴿١٨﴾

१८) त्यसदिन तिमी सबै सामुन्ने प्रस्तुत गरिनेछौ, (र) तिम्रो कुनै भेद लुकी रहने छैन ।

१९) अनि जोसुकैलाई उसको कर्मपत्र उसको दाहिने हातमा दिइनेछ, त्यसले (अरु सित) भन्नेछ: कि लिनुस् मेरो कर्मपत्र पढ्नुस् ।

فَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ بِيَمِينِهِۦ فَيَقُولُ هَآؤُمُ ٱقْرَءُوا۟ كِتَٰبِيَهْ ﴿١٩﴾

२०) मलाई पूरा यक़िन थियो कि मेरो हिसाब मलाई अवश्य प्राप्त हुनेछ ।

إِنِّى ظَنَنتُ أَنِّى مُلَٰقٍ حِسَابِيَهْ ﴿٢٠﴾

२१) अत: त्यो (व्यक्ति) आनन्दित जीवनमा हुनेछ,

فَهُوَ فِى عِيشَةٍ رَّاضِيَةٍ ﴿٢١﴾

२२) उच्चा, भव्य स्वर्गमा,

فِى جَنَّةٍ عَالِيَةٍ ﴿٢٢﴾

२३) जसका फलहरूका गुच्छाहरू झुण्डिएका हुनेछन् ।

قُطُوفُهَا دَانِيَةٌ ﴿٢٣﴾

२४) (उनीहरू सित भनिनेछ) जुन कर्म तिमीहरूले अघिका दिनहरूमा अगाडि पठाइसकेका छौ, त्यसको प्रतिफल स्वरूप मजासित खाऊ र पिऊ ।

كُلُوا۟ وَٱشْرَبُوا۟ هَنِيٓـًٔۢا بِمَآ أَسْلَفْتُمْ فِى ٱلْأَيَّامِ ٱلْخَالِيَةِ ﴿٢٤﴾

२५) तर जसको कर्मपत्र उसको बायाँ हातमा दिइनेछ, त्यसले भन्नेछ, काश कति राम्रो हुन्थ्यो कि मेरो कर्मपत्र मलाई नदिएको भए ।

وَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ بِشِمَالِهِۦ فَيَقُولُ يَٰلَيْتَنِى لَمْ أُوتَ كِتَٰبِيَهْ ﴿٢٥﴾

२६) र मलाई थाहा नभएको भए कि मेरो हिसाब के छ ।

وَلَمْ أَدْرِ مَا حِسَابِيَهْ ﴿٢٦﴾

२७) ऐ काश, मृत्युले मेरो काम नै समाप्त गरिसक्ने थियो ।

يَٰلَيْتَهَا كَانَتِ ٱلْقَاضِيَةَ ﴿٢٧﴾

२८) (आज) मेरो सम्पत्ति पनि मेरो केही काम लागेन ।

مَآ أَغْنَىٰ عَنِّى مَالِيَهْ ﴿٢٨﴾

२९) (आह) मेरो वर्चस्व मबाट गइहाल्यो ।

هَلَكَ عَنِّى سُلْطَٰنِيَهْ ﴿٢٩﴾

| | |
|---|---|
| ३०) (आदेश हुनेछ कि) यसलाई समात र यसलाई बाँधिहाल छल्ला पहिराइदिनु । | خُذُوهُ فَغُلُّوهُ ﴿٣٠﴾ |
| ३१) अनि यसलाई नर्कमा हालि देऊ । | ثُمَّ الْجَحِيمَ صَلُّوهُ ﴿٣١﴾ |
| ३२) अनि जंजीरले जसको नाप सत्तरी हाथ छ, जकडिदेऊ । | ثُمَّ فِي سِلْسِلَةٍ ذَرْعُهَا سَبْعُونَ ذِرَاعًا فَاسْلُكُوهُ ﴿٣٢﴾ |
| ३३) निश्चित रूपले यसले महिमावान अल्लाहमाथि ईमान राख्दैनथ्यो, | إِنَّهُ كَانَ لَا يُؤْمِنُ بِاللَّهِ الْعَظِيمِ ﴿٣٣﴾ |
| ३४) र न गरीबलाई खाना खुवाउँन प्रोत्साहित गर्दथ्यो, | وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿٣٤﴾ |
| ३५) अतः आज यसको यहाँ न कोही मित्र छ । | فَلَيْسَ لَهُ الْيَوْمَ هَاهُنَا حَمِيمٌ ﴿٣٥﴾ |
| ३६) र न पीप बाहेक उसको निम्ति आज कुनै खाना छ । | وَلَا طَعَامٌ إِلَّا مِنْ غِسْلِينٍ ﴿٣٦﴾ |
| ३७) जसलाई अपराधीहरूको बाहेक कसैले खाने छैन, | لَا يَأْكُلُهُ إِلَّا الْخَاطِئُونَ ﴿٣٧﴾ |
| ३८) अतः हामीलाई ती कुराहरूको क़सम छ जुन तिमीले देख्दछौ, | فَلَا أُقْسِمُ بِمَا تُبْصِرُونَ ﴿٣٨﴾ |
| ३९) र (कसम छ) ती कुराको जुन तिमीले देख्दैनौ । | وَمَا لَا تُبْصِرُونَ ﴿٣٩﴾ |
| ४०) कि यो कुरआन एक प्रतिष्ठित रसूलबाट ल्याइएको वाणी हो । | إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿٤٠﴾ |
| ४१) र यो कुनै कविको वाणी होइन । परन्तु तिमीहरूले बहुत कम विश्वास गर्दैछौ, | وَمَا هُوَ بِقَوْلِ شَاعِرٍ ۚ قَلِيلًا مَا تُؤْمِنُونَ ﴿٤١﴾ |
| ४२) र न यो कुनै ज्योतिषीको वाणी हो, तर तिमीहरूले थोरै शिक्षा प्राप्त गर्दछौ । | وَلَا بِقَوْلِ كَاهِنٍ ۚ قَلِيلًا مَا تَذَكَّرُونَ ﴿٤٢﴾ |

تَنْزِيْلٌ مِّنْ رَّبِّ الْعٰلَمِيْنَ ﴿٤٣﴾

४३) (यो त) सम्पूर्ण संसारको पालनकर्ताबाट अवतरित गरिएको हो ।

وَلَوْ تَقَوَّلَ عَلَيْنَا بَعْضَ الْاَقَاوِيْلِ ﴿٤٤﴾

४४) र यदि यस पैगम्बरले हाम्रो बारेमा कुनै झूठा कुरा बनाएर ल्याएको भए,

لَاَخَذْنَا مِنْهُ بِالْيَمِيْنِ ﴿٤٥﴾

४५) त हामीले उनलाई दाहिने हातबाट समातिहाल्थ्यौं ।

ثُمَّ لَقَطَعْنَا مِنْهُ الْوَتِيْنَ ﴿٤٦﴾

४६) अनि उनको हृदयको धमनी काटिदिंथ्यौं ।

فَمَا مِنْكُمْ مِّنْ اَحَدٍ عَنْهُ حٰجِزِيْنَ ﴿٤٧﴾

४७) अनि तिमीमध्ये कोही पनि हामीलाई यसबाट रोक्नेवाला हुँदैनथ्यो ।

وَاِنَّهٗ لَتَذْكِرَةٌ لِّلْمُتَّقِيْنَ ﴿٤٨﴾

४८) र निःसन्देह यो (कुरआन) परहेज़गारहरूको (अमात्मसयंमी) निम्ति एउटा उपदेश हो ।

وَاِنَّا لَنَعْلَمُ اَنَّ مِنْكُمْ مُّكَذِّبِيْنَ ﴿٤٩﴾

४९) र हामीलाई थाहा छ कि तिमीमध्ये केही यसलाई असत्य भन्नेवाला छन् ।

وَاِنَّهٗ لَحَسْرَةٌ عَلَى الْكٰفِرِيْنَ ﴿٥٠﴾

५०) साथै (यो झूठा मान्नु) अपसोच छ काफिरहरू को लागि ।

وَاِنَّهٗ لَحَقُّ الْيَقِيْنِ ﴿٥١﴾

५१) यो निःसंदेह बिल्कुल विश्वासनीय सत्य हो ।

فَسَبِّحْ بِاسْمِ رَبِّكَ الْعَظِيْمِ ﴿٥٢﴾

५२) अतः तिमीले आफ्नो महिमावान् पालनकर्ताको नामको गुणगान गर ।

# सूरतुल् मआरिज-७०



सूरतुल् मआरिज मक्की हो, यसमा ४४ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

سَاَلَ سَآئِلٌۢ بِعَذَابٍ وَّاقِعٍ ۙ﴿۱﴾

१) एउटा माँग्नेवालाले (रसूलसित) त्यो यातना माग्यो, जुन घटित हुनेवाला छ ।

لِّلۡكٰفِرِيۡنَ لَيۡسَ لَهٗ دَافِعٌ ۙ﴿۲﴾

२) काफिरहरूबाट कसैले त्यसलाई टाल्न सक्ने छैन ।

مِّنَ اللّٰهِ ذِى الۡمَعَارِجِ ؕ﴿۳﴾

३) अल्लाहको तर्फबाट हुनेछ, जुन (चढ्नको लागि) सोपानवाला छ ।

تَعۡرُجُ الۡمَلٰٓئِكَةُ وَالرُّوۡحُ اِلَيۡهِ فِىۡ يَوۡمٍ كَانَ مِقۡدَارُهٗ خَمۡسِيۡنَ اَلۡفَ سَنَةٍ ۚ﴿۴﴾

४) जसतिर फरिश्ताहरू र "रूह" चढ्छन् एक दिनमा त्यसको अनुमानित अवधि ५० हज़ार वर्षको हुनेछ ।

فَاصۡبِرۡ صَبۡرًا جَمِيۡلًا ﴿۵﴾

५) अर्थात् तिमी राम्रो सँग धैर्य गर ।

اِنَّهُمۡ يَرَوۡنَهٗ بَعِيۡدًا ۙ﴿۶﴾

६) निःसन्देह उनीहरूको दृष्टिमा त्यो अज़ाब टाढा छ ।

وَّنَرٰٮهُ قَرِيۡبًا ؕ﴿۷﴾

७) र हाम्रा दृष्टिमा नजीक छ ।

يَوۡمَ تَكُوۡنُ السَّمَآءُ كَالۡمُهۡلِ ۙ﴿۸﴾

८) जुन दिन आकाश जलेको तेल जस्तो भइहाल्नेछ ।

وَتَكُوۡنُ الۡجِبَالُ كَالۡعِهۡنِ ۙ﴿۹﴾

९) र पहाडहरू रंगीन ऊनको जस्ता हुनेछन् !

وَلَا يَسۡـَٔلُ حَمِيۡمٌ حَمِيۡمًا ۚ ۖ﴿۱۰﴾

१०) र कुनै मित्रले कुनै मित्रलाई सोध्ने छैन ।

يُبَصَّرُونَهُمْ يَوَدُّ الْمُجْرِمُ لَوْ يَفْتَدِي مِنْ عَذَابِ يَوْمِئِذٍ بِبَنِيهِ ﴿١١﴾

११) (जबकि) एक अर्कालाई अगाडि देखिराखेका हुनेछन् । (त्यस दिन) अपराधीले इच्छा गर्ने छ कि ( यातनाको सट्टामा) आफ्ना छोराहरू (देओस्) ।

وَصَاحِبَتِهِ وَأَخِيهِ ﴿١٢﴾

१२) र आफ्ना पत्नी र आफ्ना भाइ,

وَفَصِيلَتِهِ الَّتِي تُؤْوِيهِ ﴿١٣﴾

१३) र आफ्नो परिवार जसले उनलाई शरण दिन्थ्यो ।

وَمَنْ فِي الْأَرْضِ جَمِيعًا ثُمَّ يُنْجِيهِ ﴿١٤﴾

१४) र जति मानिसहरू धरतीमा छन् सबै कुरा दिन चाहनेछ जसले उसलाई यातनाबाट मुक्त गराइहालोस् ।

كَلَّا إِنَّهَا لَظَىٰ ﴿١٥﴾

१५) (तर) यस्तो कहिल्यै हुनेछैन, निःसंदेह त्यो प्रज्वलित आगो हो,

نَزَّاعَةً لِلشَّوَىٰ ﴿١٦﴾

१६) जसले अनुहार र टाउकोको छाला उप्काइदिनेछ,

تَدْعُو مَنْ أَدْبَرَ وَتَوَلَّىٰ ﴿١٧﴾

१७) उसले त्यस्तो प्रत्येक मानिसलाई आफूतिर बोलाउनेछ (जसले सत्य धर्मबाट) पिठ्यू फर्काएर विमुख भए,

وَجَمَعَ فَأَوْعَىٰ ﴿١٨﴾

१८) र धन एकत्रित गरेर थुपारेर राखे,

إِنَّ الْإِنْسَانَ خُلِقَ هَلُوعًا ﴿١٩﴾

१९) निःसन्देह मानिस काँचो मुटुवाला बनाइएको छ ।

إِذَا مَسَّهُ الشَّرُّ جَزُوعًا ﴿٢٠﴾

२०) जब उसलाई कष्ट पुग्छ त आत्तिन्छ,

وَإِذَا مَسَّهُ الْخَيْرُ مَنُوعًا ﴿٢١﴾

२१) तर जब उसलाई राहत (सम्पन्नता) प्राप्त हुन्छ त उसले कन्जूसी देखाउँछ,

إِلَّا الْمُصَلِّينَ ﴿٢٢﴾

२२) तर नमाज पढ्नेहरूको कुरा अर्कै छ ।

الَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ دَائِمُونَ ﴿٢٣﴾

२३) जसले नमाज नियमित्ताकासाथ पढ्दछन्,

وَالَّذِينَ فِي أَمْوَالِهِمْ حَقٌّ مَّعْلُومٌ ﴿٢٤﴾

२४) र जसको सम्पत्तिमा(अरुको) हक निश्चित छ,

لِّلسَّائِلِ وَالْمَحْرُومِ ﴿٢٥﴾

२५) (अर्थात्) माँग्नेवालाको र नमाँग्ने वालाको पनि,

وَالَّذِينَ يُصَدِّقُونَ بِيَوْمِ الدِّينِ ﴿٢٦﴾

२६) जसले न्यायको दिन(कयामत) माथि ईमान राख्दछ ।

وَالَّذِينَ هُم مِّنْ عَذَابِ رَبِّهِم مُّشْفِقُونَ ﴿٢٧﴾

२७) र जो आफ्नो पालनकर्ताको यातनाबाट डराउछन्,

إِنَّ عَذَابَ رَبِّهِمْ غَيْرُ مَأْمُونٍ ﴿٢٨﴾

२८) निःसन्देह उनीहरूको पालनकर्ताको यातना यस्तो छैन जसबाट निश्चिन्त रहन सकियोस् ।

وَالَّذِينَ هُمْ لِفُرُوجِهِمْ حَافِظُونَ ﴿٢٩﴾

२९) र जो आफ्नो गुप्ताङ्गहरूको रक्षा गर्दछन्,

إِلَّا عَلَىٰ أَزْوَاجِهِمْ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُمْ فَإِنَّهُمْ غَيْرُ مَلُومِينَ ﴿٣٠﴾

३०) तर आफ्ना पत्नीहरू वा दासीहरू बाहेक जुन उनको अधीनस्थ छन् त उनको लागि कुनै अफशोच छैन,

فَمَنِ ابْتَغَىٰ وَرَاءَ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الْعَادُونَ ﴿٣١﴾

३१) जसले यो बाहेक अरु चाहन्छन् उनीहरू सीमा उल्लंघन गर्नेवाला हुन् ।

وَالَّذِينَ هُمْ لِأَمَانَاتِهِمْ وَعَهْدِهِمْ رَاعُونَ ﴿٣٢﴾

३२) र जसले आफूमाथि गरिएका विश्वासहरू र आफूले गरेको वचन र करारको पालन गर्दछन्,

وَالَّذِيْنَ هُمْ بِشَهٰدٰتِهِمْ قَآئِمُوْنَ ۝٣٣

३३) र जो आफ्नो गवाहीमा दृढ रहन्छन्,

وَالَّذِيْنَ هُمْ عَلٰى صَلَاتِهِمْ يُحَافِظُوْنَ ۝٣٤

३४) र जो आफ्ना नमाजको रक्षा गर्दछन्,

اُولٰٓئِكَ فِيْ جَنّٰتٍ مُّكْرَمُوْنَ ۝٣٥

३५) यिनै मानिसहरू स्वर्गहरूमा सम्मानपूर्वक रहनेछन्,

فَمَالِ الَّذِيْنَ كَفَرُوْا قِبَلَكَ مُهْطِعِيْنَ ۝٣٦

३६) फेरि इन्कार गर्नेवालालाई के भएको हो कि दौड्दै आइरहेका छन्,

عَنِ الْيَمِيْنِ وَعَنِ الشِّمَالِ عِزِيْنَ ۝٣٧

३७) दायाँ र बायाँबाट समुहको रूपमा ।

اَيَطْمَعُ كُلُّ امْرِئٍ مِّنْهُمْ اَنْ يُّدْخَلَ جَنَّةَ نَعِيْمٍ ۝٣٨

३८) के उनीहरू मध्ये प्रत्येक व्यक्ति, यो लालसा राख्दै छ कि उनी अनुकम्पाबाट परिपूर्ण स्वर्गमा प्रवेश गर्नेछन् ?

كَلَّا ۭ اِنَّا خَلَقْنٰهُمْ مِّمَّا يَعْلَمُوْنَ ۝٣٩

३९) त्यस्तो कदापि हुने छैन । बरु हामीले उनीहरूलाई जुन चिजबाट सृष्टि गरेका छौं, त्यसलाई उनीहरू जान्दछन् ।

فَلَآ اُقْسِمُ بِرَبِّ الْمَشٰرِقِ وَالْمَغٰرِبِ اِنَّا لَقٰدِرُوْنَ ۝٤٠

४०) अतः केही छैन, म पूर्व र पश्चिमको पलनकर्ताको शपथ लिन्छु कि हामीलाई सामर्थ्य प्राप्त छ ।

عَلٰٓى اَنْ نُّبَدِّلَ خَيْرًا مِّنْهُمْ ۙ وَمَا نَحْنُ بِمَسْبُوْقِيْنَ ۝٤١

४१) कि उनीहरूको ठाउँमा उनीहरू भन्दा राम्रो मानिसहरू ल्याऊँ र हामी परास्त हुने वाला छैनौं ।

فَذَرْهُمْ يَخُوْضُوْا وَيَلْعَبُوْا حَتّٰى يُلٰقُوْا يَوْمَهُمُ الَّذِيْ يُوْعَدُوْنَ ۝٤٢

४२) अतः उनीहरूलाई लडाई-भिडाई गरेको अवस्थामा छोडी दिनुस् । यहाँसम्म कि आफ्नो त्यस दिन सम्म पुगी जाऊन् । जसको वाचा उनीहरूसित गरिएको छ ।

يَوْمَ يَخْرُجُونَ مِنَ الْأَجْدَاثِ سِرَاعًا كَأَنَّهُمْ إِلَىٰ نُصُبٍ يُوفِضُونَ ﴿٤٣﴾

४३) जुनदिन उनीहरू चिहानबाट तिव्रताको साथ दौड्दै निस्कनेछन् । मानौं कि, कुनै (विशेष) ठाउँतिर दौड्दै गइरहेका छन् ।

خَاشِعَةً أَبْصَارُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ ۚ ذَٰلِكَ الْيَوْمُ الَّذِي كَانُوا يُوعَدُونَ ﴿٤٤﴾

४४) उनीहरूको आँखा लज्जाले झुकि रहनेछन् र अपमान उनीहरू माथि घेरी राख्नेछ । यो नै त्यो दिन हो, जसको उनीरुसँग वाचा गरिदै थियो ।



## सूरतु नूह-७१




सूरतु नूह मक्की हो, यसमा २८ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِنَّآ أَرْسَلْنَا نُوحًا إِلَىٰ قَوْمِهِۦٓ أَنْ أَنذِرْ قَوْمَكَ مِن قَبْلِ أَن يَأْتِيَهُمْ عَذَابٌ أَلِيمٌ ①

१) हामीले "नूह(अ.)लाई" निश्चित रूपले उनको कौमतिर पठायौं कि आफ्ना कौमका मानिसहरूलाई डराऊ र सावधान गरिदेऊ, यसभन्दा पहिला कि उनीहरूमाथि कुनै दु:खद यातना आओस् ।

قَالَ يَٰقَوْمِ إِنِّى لَكُمْ نَذِيرٌ مُّبِينٌ ②

२) उनले भने "हे मेरो कौमका मानिसहरू ! म तिम्रो निम्ति एउटा स्पष्ट सचेतकर्ता हूँ,

أَنِ ٱعْبُدُوا۟ ٱللَّهَ وَٱتَّقُوهُ وَأَطِيعُونِ ③

३) कि ! अल्लाहको उपासना गर र उसित डर र मेरो भनाई मान ।

يَغْفِرْ لَكُم مِّن ذُنُوبِكُمْ وَيُؤَخِّرْكُمْ إِلَىٰٓ أَجَلٍ مُّسَمًّى ۚ إِنَّ أَجَلَ ٱللَّهِ إِذَا جَآءَ لَا يُؤَخَّرُ ۖ لَوْ كُنتُمْ تَعْلَمُونَ ④

४) तब उसले तिम्रो पाप क्षमा गरिदिनेछ र निश्चित समयसम्म तिमीलाई मोहलत प्रदान गर्नेछ । नि:संदेह जब अल्लाहले निर्धारण गरेको समय आइपुग्छ तब विलम्ब हुँदैन, काश तिमीले जान्नेभएको भए ।

قَالَ رَبِّ إِنِّى دَعَوْتُ قَوْمِى لَيْلًا وَنَهَارًا ⑤

५) नूह(अ.)ले भने कि, हे मेरो पालनकर्ता ! मैले आफ्नो जातिबन्धुलाई रातदिन तिम्रोतर्फ बोलाउने गरे,

فَلَمْ يَزِدْهُمْ دُعَآءِيْٓ اِلَّا فِرَارًا ﴿٦﴾

६) तर मेरो पुकारबाट उनीहरू भन् टाढिदै गए ।

وَاِنِّيْ كُلَّمَا دَعَوْتُهُمْ لِتَغْفِرَ لَهُمْ جَعَلُوْٓا اَصَابِعَهُمْ فِيْٓ اٰذَانِهِمْ وَاسْتَغْشَوْا ثِيَابَهُمْ وَاَصَرُّوْا وَاسْتَكْبَرُوا اسْتِكْبَارًا ﴿٧﴾

७) जहिलेपनि मैले उनीहरूलाई तिम्रो क्षमा तर्फ बोलाएँ, उनीहरूले आफ्ना कानलाई औंलाले थुने र कपडाले आफूलाई छोपिहाले र अटेरी भएर घमण्ड गरे ।

ثُمَّ اِنِّيْ دَعَوْتُهُمْ جِهَارًا ﴿٨﴾

८) अनि मैले उनलाई ठूलो स्वरले बोलाएँ ।

ثُمَّ اِنِّيْٓ اَعْلَنْتُ لَهُمْ وَاَسْرَرْتُ لَهُمْ اِسْرَارًا ﴿٩﴾

९) अनि निःसंदेह मैले उनीहरूसित खुल्ला तौरले पनि कुरो गरें र उनीहरूसित गोप्यरूपले पनि कुरा गरें ।

فَقُلْتُ اسْتَغْفِرُوْا رَبَّكُمْ ۗ اِنَّهٗ كَانَ غَفَّارًا ﴿١٠﴾

१०) र मैले भने कि: आफ्नो पालनकर्तासित आफ्ना पापबाट मुक्ति गराऊ र क्षमा माँग । निश्चय नै ऊ ठूलो क्षमादाता हो ।

يُّرْسِلِ السَّمَآءَ عَلَيْكُمْ مِّدْرَارًا ﴿١١﴾

११) उसले तिमीमाथि निकै वर्षाउने वाला बादल पठाउने छ ।

وَّيُمْدِدْكُمْ بِاَمْوَالٍ وَّبَنِيْنَ وَيَجْعَلْ لَّكُمْ جَنّٰتٍ وَّيَجْعَلْ لَّكُمْ اَنْهٰرًا ﴿١٢﴾

१२) र उसले सम्पत्ति र सन्तानमा तिमीलाई बढोत्तरी प्रदान गर्ने छ, र तिम्रो निम्ति बगैंचाहरू पैदा गर्ने छ र तिम्रो निम्ति नहरहरू प्रवाहित गर्नेछ ।

مَا لَكُمْ لَا تَرْجُوْنَ لِلّٰهِ وَقَارًا ﴿١٣﴾

१३) तिमीलाई के भएको छ कि तिमीले अल्लाहको सर्वश्रेष्ठता माथि ईमान राख्दैनौ ?

१४) जबकि उसले तिमीलाई विभिन्न अवस्थाहरूबाट गुजार्दै सृष्टि गरेको छ ।

وَقَدْ خَلَقَكُمْ أَطْوَارًا ﴿١٤﴾

१५) के तिमीले देखेनौ कि अल्लाहले कसरी एउटामाथि अर्को गरी सातवटा आकाशहरू बनाएको छ ?

أَلَمْ تَرَوْا كَيْفَ خَلَقَ اللَّهُ سَبْعَ سَمَاوَاتٍ طِبَاقًا ﴿١٥﴾

१६) र उनीहरूमा चन्द्रलाई जगमगाउँदो बनाएको छ, र सूर्यलाई प्रकाशयुक्त दीप बनाएको छ ?

وَجَعَلَ الْقَمَرَ فِيهِنَّ نُورًا وَجَعَلَ الشَّمْسَ سِرَاجًا ﴿١٦﴾

१७) र अल्लाहले नै तिमीलाई धरतीबाट सृष्टि गरेको छ,

وَاللَّهُ أَنْبَتَكُمْ مِنَ الْأَرْضِ نَبَاتًا ﴿١٧﴾

१८) अनि त्यसैमा तिमीलाई फर्काउनेछ र तिमीलाई निकालि उभ्याउनेछ ।

ثُمَّ يُعِيدُكُمْ فِيهَا وَيُخْرِجُكُمْ إِخْرَاجًا ﴿١٨﴾

१९) र अल्लाहले नै धरतीलाई तिम्रो निम्ती फर्श बनायो ।

وَاللَّهُ جَعَلَ لَكُمُ الْأَرْضَ بِسَاطًا ﴿١٩﴾

२०) ताकि उसका ठूला-ठूला विस्तृत मार्गमा हिंड ।

لِتَسْلُكُوا مِنْهَا سُبُلًا فِجَاجًا ﴿٢٠﴾

२१) नूह(अ.)ले भनेः कि "मेरो पालनकर्ता । उनीहरूले मेरो अवज्ञा गरे, र उसको अनुशरण गरे जसको धन र जसको सन्तानले उनको घाटामै नै वृद्धि गऱ्यो ।

قَالَ نُوحٌ رَبِّ إِنَّهُمْ عَصَوْنِي وَاتَّبَعُوا مَنْ لَمْ يَزِدْهُ مَالُهُ وَوَلَدُهُ إِلَّا خَسَارًا ﴿٢١﴾

२२) र उनीहरूले धेरै ठूलो षड्यन्त्र गरे,

وَمَكَرُوا مَكْرًا كُبَّارًا ﴿٢٢﴾

२३) र उनीहरूले भन्नथाले कि आफ्ना पूज्यहरूलाई कदापि नछाड्नु र खासगरी "वद्द" र "सुवाअ्" र "यगूस" र यअूक़ र नस्रलाई कदापि परित्याग नगर्नु ।

وَقَالُوا لَا تَذَرُنَّ آلِهَتَكُمْ وَلَا تَذَرُنَّ وَدًّا وَلَا سُوَاعًا وَلَا يَغُوثَ وَيَعُوقَ وَنَسْرًا ﴿٢٣﴾

وَقَدْ أَضَلُّوا كَثِيرًا ۖ وَلَا تَزِدِ الظَّالِمِينَ إِلَّا ضَلَالًا ﴿٢٤﴾

२४) र उनीहरूले धेरै मानिसहरूलाई पथ विचलित गरिदिएका छन्, (हे पालनकर्ता) तिमीले उनीहरूलाई अझै बढी पथभ्रष्ट गरिदेऊ ।

مِمَّا خَطِيئَاتِهِمْ أُغْرِقُوا فَأُدْخِلُوا نَارًا فَلَمْ يَجِدُوا لَهُم مِّن دُونِ اللَّهِ أَنصَارًا ﴿٢٥﴾

२५) अन्ततः उनीहरू आफ्ना पापहरूका कारणले (जलप्रलयमा) डुबाइए, अनि नर्कमा हालिए, र उनीहरूले अल्लाह बाहेक कसैलाई आफ्नो मद्दतगर्ने पाएनन् ।

وَقَالَ نُوحٌ رَّبِّ لَا تَذَرْ عَلَى الْأَرْضِ مِنَ الْكَافِرِينَ دَيَّارًا ﴿٢٦﴾

२६) र नूह(अ.)ले प्रार्थना गरेकि हे मेरो पालनकर्ता धरतीमा बसिरहेको कुनै काफिरलाई राम्रो अवस्थामा नछाड ।

إِنَّكَ إِن تَذَرْهُمْ يُضِلُّوا عِبَادَكَ وَلَا يَلِدُوا إِلَّا فَاجِرًا كَفَّارًا ﴿٢٧﴾

२७) यदि तिमीले उनीहरूलाई छाडदिनेछौ भने निश्चयनै तिम्रा अरु दासहरूलाई पनि पथभ्रष्ट गरिदिनेछन्, र उनीहरूले दुराचारी र ठूलो काफिरहरूलाई नै जन्म दिनेछन् ।

رَّبِّ اغْفِرْ لِي وَلِوَالِدَيَّ وَلِمَن دَخَلَ بَيْتِيَ مُؤْمِنًا وَلِلْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ وَلَا تَزِدِ الظَّالِمِينَ إِلَّا تَبَارًا ﴿٢٨﴾

२८) हे मेरो पालनकर्ताः मलाई र मेरो आमा बाबुलाई र जो पनि ईमानवाला भएर मेरो घरमा आए र तमाम ईमानवाला पुरुषहरू र ईमान भएकी स्त्रीहरूलाई क्षमा गरिदेऊ र अत्याचारीहरूको निम्ति अझै विनाशमा वृद्धि गर ।

# सूरतुल् जिन्न-७२




सूरतुल् जिन्न मक्की हो, यसमा २८ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

قُلْ أُوحِيَ إِلَيَّ أَنَّهُ اسْتَمَعَ نَفَرٌ مِّنَ الْجِنِّ فَقَالُوا إِنَّا سَمِعْنَا قُرْآنًا عَجَبًا ﴿١﴾

१) (हे पैगम्बर स.) भनिदिनुस् कि मेरो पासमा वह्य आएको छ कि जिन्नहरूको एउटा समूहले (किताबलाई) सुनेर भन्न थाले कि हामीले एउटा आश्चर्य लाग्दो “कुरआन” सुन्यौं ।

يَهْدِي إِلَى الرُّشْدِ فَآمَنَّا بِهِ ۖ وَلَن نُّشْرِكَ بِرَبِّنَا أَحَدًا ﴿٢﴾

२) जसले भलाईको बाटो देखाउँछ, तसर्थ हामीले त्यसमाथि ईमान ल्यायौं । (अब) हामीले आफ्नो पालनकर्तासँग कसैलाई कदापि साझेदार बनाउने छैनौं,

وَأَنَّهُ تَعَالَىٰ جَدُّ رَبِّنَا مَا اتَّخَذَ صَاحِبَةً وَلَا وَلَدًا ﴿٣﴾

३) र निश्चित रूपले हाम्रो पालनकर्ताको गौरव अत्यन्त उच्च छ उसले आफ्नो निम्ति कसैलाई न पत्नी बनायो न कुनै सन्तान,

وَأَنَّهُ كَانَ يَقُولُ سَفِيهُنَا عَلَى اللَّهِ شَطَطًا ﴿٤﴾

४) र यो कि हामीमध्ये केही मूर्खले अल्लाहको बारेमा असत्य कुरा रच्दछन्,

وَأَنَّا ظَنَنَّا أَن لَّن تَقُولَ الْإِنسُ وَالْجِنُّ عَلَى اللَّهِ كَذِبًا ﴿٥﴾

५) र हामीले यो ठानेका थियौं कि मानिस र जिन्नहरू अल्लाहको बारेमा झूठ बोल्दैनन् ।

وَأَنَّهُ كَانَ رِجَالٌ مِّنَ الْإِنسِ يَعُوذُونَ بِرِجَالٍ

६) कुरो यो हो कि केही मानिसहरूले

مِّنَ الْجِنِّ فَزَادُوهُمْ رَهَقًا ﴿٦﴾

केही जिन्नहरूको शरण माग्दथे, जसबाट उनको अटेरीपना झन् बढीहालेको थियो ।

وَأَنَّهُمْ ظَنُّوا كَمَا ظَنَنتُمْ أَن لَّن يَبْعَثَ اللَّهُ أَحَدًا ﴿٧﴾

७) र मानिसहरूले पनि तिमी जिन्नहरू जस्तै अनुमान गरेका थिए कि अल्लाहले कसैलाई पठाउने छैन, (वा पुर्नजीवित गर्नेछैन) ।

وَأَنَّا لَمَسْنَا السَّمَاءَ فَوَجَدْنَاهَا مُلِئَتْ حَرَسًا شَدِيدًا وَشُهُبًا ﴿٨﴾

८) र यो कि हामीहरूले आकाशमा चियायौं, त त्यसलाई बलिया पहरेदार र प्रज्वलित आगोले भरिएको पायौं,

وَأَنَّا كُنَّا نَقْعُدُ مِنْهَا مَقَاعِدَ لِلسَّمْعِ ۖ فَمَن يَسْتَمِعِ الْآنَ يَجِدْ لَهُ شِهَابًا رَّصَدًا ﴿٩﴾

९) र यो कि पहिला हामी आकाशमा कैयन् ठाउँहरूमा कुरा सुन्नको निम्ति बस्ने गर्दथ्यौं । त अहिले जो पनि कान लगाउँछ एक आगोको झिल्का आफ्नो तिर पाउँछ ।

وَأَنَّا لَا نَدْرِي أَشَرٌّ أُرِيدَ بِمَن فِي الْأَرْضِ أَمْ أَرَادَ بِهِمْ رَبُّهُمْ رَشَدًا ﴿١٠﴾

१०) र यो हामी जान्दैनौं कि तिनीहरूको साथ जो धरतीमा छन् नराम्रो कुराको इरादा गरिएको छ वा उनीहरूको पालनकर्ताले उनीहरूको लागि भलो गर्ने विचार गरेको छ ।

وَأَنَّا مِنَّا الصَّالِحُونَ وَمِنَّا دُونَ ذَٰلِكَ ۖ كُنَّا طَرَائِقَ قِدَدًا ﴿١١﴾

११) र यो कि हामीमध्ये कोही नेक छन् र कोही विपरित प्रकारको पनि छन् । हामी विभिन्न किसिमले बाँडिएका छौं,

وَأَنَّا ظَنَنَّا أَن لَّن نُّعْجِزَ اللَّهَ فِي الْأَرْضِ وَلَن نُّعْجِزَهُ هَرَبًا ﴿١٢﴾

१२) र (यो कि) हामीले विश्वास गरिसकेछौं कि हामी धरतीमा अल्लाहलाई पराजित गर्न सक्दैनौ र नभागेर उसलाई थकाउन सक्छौं,

वَّاَنَّا لَمَّا سَمِعۡنَا الۡهُدٰٓى اٰمَنَّا بِهٖ ؕ فَمَنۡ يُّؤۡمِنۡۢ بِرَبِّهٖ فَلَا يَخَافُ بَخۡسًا وَّلَا رَهَقًا ۙ﴿۱۳﴾

१३) र हामीले त मार्गदर्शन (को किताब) सुन्यौं, त त्यसमाथि ईमान ल्याइहाल्यौं र जसले आफ्नो पालनकर्तामाथि ईमान ल्याउँछ उसलाई न कुनै हानिको डर हुन्छ, न अत्याचारको,

وَّاَنَّا مِنَّا الۡمُسۡلِمُوۡنَ وَمِنَّا الۡقٰسِطُوۡنَ ؕ فَمَنۡ اَسۡلَمَ فَاُولٰٓـئِكَ تَحَرَّوۡا رَشَدًا ﴿۱۴﴾

१४) र यो कि हामी मध्ये केही आज्ञाकारी छन् र केही अवज्ञाकारी छन्, तसर्थ जो आज्ञाकारी भए, उनीहरू त सोझो मार्गमा हिंडे,

وَاَمَّا الۡقٰسِطُوۡنَ فَكَانُوۡا لِجَهَنَّمَ حَطَبًا ۙ﴿۱۵﴾

१५) र जो पापी(अपराधी) भए उनीहरू नर्कको इन्धन भए,

وَّاَنۡ لَّوِ اسۡتَقَامُوۡا عَلَى الطَّرِيۡقَةِ لَاَسۡقَيۡنٰهُمۡ مَّآءً غَدَقًا ۙ﴿۱۶﴾

१६) र (हे पैगम्बर ! यो पनि उनीहरूसित भनिदिनुस्) कि यदि यिनीहरू सोझो मार्गमा रहेको भए हामीले उनीहरूको निम्ति पिउनलाई प्रशस्त पानी दिन्थ्यौं,

لِّنَفۡتِنَهُمۡ فِيۡهِ ؕ وَمَنۡ يُّعۡرِضۡ عَنۡ ذِكۡرِ رَبِّهٖ يَسۡلُكۡهُ عَذَابًا صَعَدًا ۙ﴿۱۷﴾

१७) ताकि यसबाट उनको परीक्षा गरौं र जुन मानिसले आफ्नो पालनकर्ताको स्मरणबाट मुख फर्काउनेछ, अल्लाहले उसलाई दु:खद यातनामा प्रविष्ट गर्नेछ,

وَّاَنَّ الۡمَسٰجِدَ لِلّٰهِ فَلَا تَدۡعُوۡا مَعَ اللّٰهِ اَحَدًا ۙ﴿۱۸﴾

१८) र यो कि मस्जिदहरू अल्लाह कै लागि मात्र हुन्, तसर्थ अल्लाहसँग कुनै अरुको पूजा नगर,

وَّاَنَّهٗ لَمَّا قَامَ عَبۡدُ اللّٰهِ يَدۡعُوۡهُ كَادُوۡا يَكُوۡنُوۡنَ عَلَيۡهِ لِبَدًا ؕ﴿۱۹﴾

१९) र जब अल्लाहका भक्त (मोहम्मद), उसको पूजाको निम्ति उभे त काफिरहरूले उनलाई चारैतर्फबाट घेरी उनीमाथि आक्रमण गर्नेवाला थिए ।

قُلْ إِنَّمَآ أَدْعُوا۟ رَبِّى وَلَآ أُشْرِكُ بِهِۦٓ أَحَدًا ﴿٢٠﴾

२०) भनिदिनुस् कि म त आफ्नो पालनकर्तालाई मात्र पूजा गर्दछु। र उसको साथ कसैलाई शम्मिलित गर्दिन।

قُلْ إِنِّى لَآ أَمْلِكُ لَكُمْ ضَرًّا وَلَا رَشَدًا ﴿٢١﴾

२१) यो पनि भनिदेऊः कि मलाई तिम्रो हकमा नाफा नोक्सानको कुनै अधिकार छैन,

قُلْ إِنِّى لَن يُجِيرَنِى مِنَ ٱللَّهِ أَحَدٌ وَلَنْ أَجِدَ مِن دُونِهِۦ مُلْتَحَدًا ﴿٢٢﴾

२२) यो पनि भनिदिनुस् कि अल्लाह (को यातना) बाट मलाई कसैले बचाउन सक्दैन र म उस बाहेक अन्य कतै शरणको ठाउँ देख्दिन,

إِلَّا بَلَٰغًا مِّنَ ٱللَّهِ وَرِسَٰلَٰتِهِۦ ۚ وَمَن يَعْصِ ٱللَّهَ وَرَسُولَهُۥ فَإِنَّ لَهُۥ نَارَ جَهَنَّمَ خَٰلِدِينَ فِيهَآ أَبَدًا ﴿٢٣﴾

२३) हो, अल्लाहको तर्फबाट आदेशहरू र उसको सन्देशहरू पुऱ्याउने काम (नै मेरो जिम्मामा छ) र जुन मानिसले अल्लाह र उसको पैगम्बरको अवज्ञा गर्नेछ त यस्ताको लागि जहन्नमको आगो छ, सधैं त्यसमा रहनेछन्,

حَتَّىٰٓ إِذَا رَأَوْا۟ مَا يُوعَدُونَ فَسَيَعْلَمُونَ مَنْ أَضْعَفُ نَاصِرًا وَأَقَلُّ عَدَدًا ﴿٢٤﴾

२४) यहाँसम्म कि अब यिनीहरूले त्यो (दिन) देखिहाल्नेछन्, जसको उनीसित वाचा गरिएको थियो, तब उनलाई थाहा भइहाल्ने छ कि कसका सहायकहरू कमजोर र संख्या कसको थोरै छ,

قُلْ إِنْ أَدْرِىٓ أَقَرِيبٌ مَّا تُوعَدُونَ أَمْ يَجْعَلُ لَهُۥ رَبِّىٓ أَمَدًا ﴿٢٥﴾

२५) भनिदिनुस् कि जुन तिमीसित वाचा गरिन्छ, मलाई थाहा छैन कि त्यो नजिक छ वा मेरो पालनकर्ताले त्यसको अवधि लामो गरिदिएको छ,

عٰلِمُ الْغَيْبِ فَلَا يُظْهِرُ عَلٰى غَيْبِهٖٓ اَحَدًا ۝٢٦

२६) ऊ अदृश्य जान्नेवाला छ र कसैलाई आफ्नो परोक्षको कुरा प्रकट गर्दैन,

اِلَّا مَنِ ارْتَضٰى مِنْ رَّسُوْلٍ فَاِنَّهٗ يَسْلُكُ مِنْۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهٖ رَصَدًا ۝٢٧

२७) हो, जुन पैगम्बरलाई रुचाउँछ, उस बाहेक, तर उनको अगाडि र पछाडि पनि रक्षकहरू खटाइदिन्छ,

لِّيَعْلَمَ اَنْ قَدْ اَبْلَغُوْا رِسٰلٰتِ رَبِّهِمْ وَاَحَاطَ بِمَا لَدَيْهِمْ وَاَحْصٰى كُلَّ شَيْءٍ عَدَدًا ۝٢٨

२८) ताकि जानकारी लियोस् कि उनीहरूले आफ्नो पालनकर्ताको सन्देश पुऱ्याइदिएका छन् र उसले उनीहरूका सबै कुराहरूलाई नियन्त्रित गरेको छ र हरेक कुरालाई गनिसकेकोछ ।



## सूरतुल् मुज़्ज़म्मिल-७३




सूरतुल् मुज़्ज़म्मिल मक्की हो, यसमा २० आयतहरू र २ रुकूअ्हरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम — بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

يٰۤاَيُّهَا الْمُزَّمِّلُ ۙ﴿۱﴾

१) हे (मोहम्मद स.अ.) लुगामा बेरिएका,

قُمِ الَّيْلَ اِلَّا قَلِيْلًا ۙ﴿۲﴾

२) राती उठेर (नमाजको निम्ति) उभिने गर्नु तर थोरै ।

نِّصْفَهٗۤ اَوِ انْقُصْ مِنْهُ قَلِيْلًا ۙ﴿۳﴾

३) आधारात वा त्यसभन्दा केही कम गर्नुस् ।

اَوْ زِدْ عَلَيْهِ وَرَتِّلِ الْقُرْاٰنَ تَرْتِيْلًا ؕ﴿۴﴾

४) वा केही बढि, र विस्तारै रोकि-रोकि कुरआन पढ्ने गर्नु ।

اِنَّا سَنُلْقِيْ عَلَيْكَ قَوْلًا ثَقِيْلًا ﴿۵﴾

५) निश्चित रूपले हामीले शीघ्र नै तपाईमाथि एउटा ठूलो कुरो अवतरित गर्नेछौं ।

اِنَّ نَاشِئَةَ الَّيْلِ هِيَ اَشَدُّ وَطْاً وَّاَقْوَمُ قِيْلًا ؕ﴿۶﴾

६) नि:सन्देह राति उठ्नुमा अनुकूलता हुन्छ र कुरालाई पनि राम्रो सँग स्पष्ट गरिदिन्छ ।

اِنَّ لَكَ فِي النَّهَارِ سَبْحًا طَوِيْلًا ؕ﴿۷﴾

७) दिनको समयमा त तपाईलाई अन्य धेरै व्यस्तता हुन्छन् ।

وَاذْكُرِ اسْمَ رَبِّكَ وَتَبَتَّلْ اِلَيْهِ تَبْتِيْلًا ؕ﴿۸﴾

८) तपाईले आफ्नो पालनकर्ताको नामको स्मरण गर्नु र अरु समस्त कुरालाई पन्छ्याई सम्पूर्ण हृदयले उसैतिर लाग्नु ।

رَبُّ الْمَشْرِقِ وَالْمَغْرِبِ لَاۤ اِلٰهَ اِلَّا هُوَ فَاتَّخِذْهُ وَكِيْلًا ﴿۹﴾

९) पूर्व र पश्चिमको स्वामी उसबाहेक कोही सत्य पूज्य छैन, अत: तिमीले

उसैलाई नै आफ्नो कार्यसाधक बनाइहाल ।

१०) र जे जति कुरा यिनी भन्दछन त्यसलाई सहँदै गर्नु र उनीहरूबाट राम्रोसित पन्छिदै गर्नु ।

وَاصْبِرْ عَلَىٰ مَا يَقُولُونَ وَاهْجُرْهُمْ هَجْرًا جَمِيلًا ﴿١٠﴾

११) र मलाई झूठा ठहराउने सुख-सम्पन्न मानिसहरूलाई छोडिदिनु र उनीहरूलाई अलिकति मोहलत देऊ ।

وَذَرْنِي وَالْمُكَذِّبِينَ أُولِي النَّعْمَةِ وَمَهِّلْهُمْ قَلِيلًا ﴿١١﴾

१२) निःसन्देह हामीसँग कडा नेलहरू (हतकडी) छन् र प्रज्वलित आगोको नर्क छ,

إِنَّ لَدَيْنَا أَنكَالًا وَجَحِيمًا ﴿١٢﴾

१३) र घाँटीमा अडकिने खाना छ र कष्टदायक यातना छ,

وَطَعَامًا ذَا غُصَّةٍ وَعَذَابًا أَلِيمًا ﴿١٣﴾

१४) जुनदिन धरती र पहाड कम्पित हुनेछन् र पहाड बालुवाको ढिस्कोझैं हुनेछन्,

يَوْمَ تَرْجُفُ الْأَرْضُ وَالْجِبَالُ وَكَانَتِ الْجِبَالُ كَثِيبًا مَّهِيلًا ﴿١٤﴾

१५) (हे मक्कावालाहरू र) जुन प्रकारले हामीले फिरऔनको पासमा पैगम्बर पठाएका थियौं । तिम्रो पासमा पनि (मोहम्मद) रसूल पठाएका छौं, जो तिम्रो सम्बन्धमा साक्षी हुनेछन् ।

إِنَّا أَرْسَلْنَا إِلَيْكُمْ رَسُولًا شَاهِدًا عَلَيْكُمْ كَمَا أَرْسَلْنَا إِلَىٰ فِرْعَوْنَ رَسُولًا ﴿١٥﴾

१६) फिरऔनले त्यस रसूलको अवज्ञा गऱ्यो त हामीले उसलाई कठोर यातनामा समातिहाल्यौं ।

فَعَصَىٰ فِرْعَوْنُ الرَّسُولَ فَأَخَذْنَاهُ أَخْذًا وَبِيلًا ﴿١٦﴾

१७) यदि तिमीले पनि मान्ने छैनौ भने त्यसदिनबाट कसरी बाँच्छौ, जुन दिन बच्चाहरूलाई वृद्ध बनाइदिनेछ ।

فَكَيْفَ تَتَّقُونَ إِن كَفَرْتُمْ يَوْمًا يَجْعَلُ الْوِلْدَانَ شِيبًا ﴿١٧﴾

१८) जुन दिन आकाश फाटिहाल्नेछ । यो अल्लाहको वाचा पूरा भएर नै रहने छ ।

السَّمَآءُ مُنۡفَطِرٌۢ بِهٖ ؕ كَانَ وَعۡدُهٗ مَفۡعُوۡلًا ﴿۱۸﴾

१९) यो कुरआन त निश्चय नै एउटा उपदेश हो । अब जसले चाहन्छ, आफ्नो पालनकर्तातिर मार्गग्रहण गरोस् ।

اِنَّ هٰذِهٖ تَذۡكِرَةٌ ۚ فَمَنۡ شَآءَ اتَّخَذَ اِلٰى رَبِّهٖ سَبِيۡلًا ﴿۱۹﴾

२०) नि:सन्देह तपाईको पालनकर्ताले जान्दछ कि तपाई र तपाईको, साथीहरूको एक समूह लगभग दुई-तिहाई रात, आधी रात र एक-तिहाई रातीसम्म (नमाजको निम्ति) उभिने गर्दछ । रात र दिनको पूरा अनुमान अल्लाहले गर्दछ । उसलाई राम्ररी थाहा छ कि तिमीहरू त्यसलाई सधैं निर्वाह गर्न सक्दैनौ, त उसले तिमीहरूमाथि कृपा गऱ्यो अतः तिमीहरूका लागि जति कुरआन पढ्नु सजिलो छ उत्तिकै पढ्ने गर । उसलाई थाहा छ कि तिमीमध्ये केही विरामी पनि होलान्, र केही अन्य मानिसहरू अल्लाहको आदर अनुग्रहलाई खोज्दै धरतीमा जीविकाको खोजी गर्नेछन्, र केही अन्य अल्लाहको मार्गमा युद्ध गर्नेछन् । अतः सजिलो सँग त्यस कुरआनबाट जति पढ्न सक्दछौ पढ र नमाज़ पढ र जकात दिंदै गर, र अल्लाहलाई राम्रो ऋण देऊ, र तिमीले जुन

اِنَّ رَبَّكَ يَعۡلَمُ اَنَّكَ تَقُوۡمُ اَدۡنٰى مِنۡ ثُلُثَىِ الَّيۡلِ وَنِصۡفَهٗ وَثُلُثَهٗ وَطَآئِفَةٌ مِّنَ الَّذِيۡنَ مَعَكَ ؕ وَاللّٰهُ يُقَدِّرُ الَّيۡلَ وَالنَّهَارَ ؕ عَلِمَ اَنۡ لَّنۡ تُحۡصُوۡهُ فَتَابَ عَلَيۡكُمۡ فَاقۡرَءُوۡا مَا تَيَسَّرَ مِنَ الۡقُرۡاٰنِ ؕ عَلِمَ اَنۡ سَيَكُوۡنُ مِنۡكُمۡ مَّرۡضٰى ۙ وَاٰخَرُوۡنَ يَضۡرِبُوۡنَ فِى الۡاَرۡضِ يَبۡتَغُوۡنَ مِنۡ فَضۡلِ اللّٰهِ ۙ وَاٰخَرُوۡنَ يُقَاتِلُوۡنَ فِىۡ سَبِيۡلِ اللّٰهِ ۖ فَاقۡرَءُوۡا مَا تَيَسَّرَ مِنۡهُ ۙ وَاَقِيۡمُوا الصَّلٰوةَ وَاٰتُوا الزَّكٰوةَ وَاَقۡرِضُوا اللّٰهَ قَرۡضًا حَسَنًا ؕ وَمَا تُقَدِّمُوۡا لِاَنۡفُسِكُمۡ مِّنۡ خَيۡرٍ تَجِدُوۡهُ عِنۡدَ اللّٰهِ هُوَ خَيۡرًا وَّاَعۡظَمَ اَجۡرًا ؕ وَاسۡتَغۡفِرُوا اللّٰهَ ؕ اِنَّ اللّٰهَ غَفُوۡرٌ رَّحِيۡمٌ ﴿۲۰﴾

भलाई आफ्नो निम्ति अगाडि बढाउनेछौ त्यसलाई अल्लाह कहाँ अति उत्तम र प्रतिफलको दृष्टिले धेरै बढी पाउनेछौ । अल्लाहसित क्षमायाचना गरिराख । निःसन्देह अल्लाह, अत्यन्त क्षमादाता र अत्यन्त दयावान छ ।



# सूरतुल् मुद्दस्सिर-७४




सूरतुल् मुद्दस्सिर मक्की हो, यसमा ५६ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

يٰۤاَيُّهَا الْمُدَّثِّرُ ۝١

१) हे मोहम्मद ! लुगा बेर्नेवाला,

قُمْ فَاَنْذِرْ ۝٢

२) उठ र सावधान गरीदिनु ।

وَرَبَّكَ فَكَبِّرْ ۝٣

३) र आफ्नो पालनकर्ताको गरिमा वर्णन गर्नु ।

وَثِيَابَكَ فَطَهِّرْ ۝٤

४) र आफ्ना कपडाहरूलाई पाक-पवित्र राख्नु ।

وَالرُّجْزَ فَاهْجُرْ ۝٥

५) फोहोरपनालाई छाडी दिनु ।

وَلَا تَمْنُنْ تَسْتَكْثِرُ ۝٦

६) र भलाई गरेर यसभन्दा बढीलिने इच्छा नगर्नु ।

وَلِرَبِّكَ فَاصْبِرْ ۝٧

७) र आफ्नो पालनकर्ताको निम्ति धैर्य गर्नु ।

فَاِذَا نُقِرَ فِي النَّاقُوْرِ ۝٨

८) जब सूरमा फूँक मारिनेछ ।

فَذٰلِكَ يَوْمَئِذٍ يَّوْمٌ عَسِيْرٌ ۝٩

९) त्यो दिन बडो कठोर दिन हुनेछ ।

عَلَى الْكٰفِرِيْنَ غَيْرُ يَسِيْرٍ ۝١٠

१०) काफिरहरूको लागि सजिलो हुनेछैन ।

ذَرْنِيْ وَمَنْ خَلَقْتُ وَحِيْدًا ۝١١

११) मलाई र त्यसलाई छोडी देऊ जसलाई मैले एक्लो सृष्टि गरेको छु ।

وَّجَعَلْتُ لَهٗ مَالًا مَّمْدُوْدًا ۝١٢

१२) र प्रशस्त माल-सम्पत्ति दियौं ।

وَّبَنِيْنَ شُهُوْدًا ۝١٣

१३) हरेक समय उसको पासमा उपस्थित रहने सन्तानहरू पनि ।

| | |
|---|---|
| १४) मैले उसलाई हरेक प्रकारको सामग्रीमा प्रशस्तता प्रदान गरें । | وَّمَهَّدتُّ لَهُۥ تَمۡهِيدٗا ١٤ |
| १५) अझै उसले इच्छा गर्दछ कि मैले उसलाई अरु बढि प्रदान गरूँ । | ثُمَّ يَطۡمَعُ أَنۡ أَزِيدَ ١٥ |
| १६) यस्तो कदापि हुनेछैन । यो हाम्रो आयतहरूको शत्रु रहदै आएको छ, | كَلَّآۖ إِنَّهُۥ كَانَ لِأٓيَٰتِنَا عَنِيدٗا ١٦ |
| १७) शीघ्र नै मैले उसलाई कठिन उकालोमा उक्लन लगाउने छुँ । | سَأُرۡهِقُهُۥ صَعُودًا ١٧ |
| १८) उसले सोच्यो र अड्कलले एउटा कुरा बनायो । | إِنَّهُۥ فَكَّرَ وَقَدَّرَ ١٨ |
| १९) नष्ट होस् उसले कस्तो अड्कल गऱ्यो ? | فَقُتِلَ كَيۡفَ قَدَّرَ ١٩ |
| २०) फेरि त्यो नष्ट होस्, उसले कस्तो अड्कल गऱ्यो, | ثُمَّ قُتِلَ كَيۡفَ قَدَّرَ ٢٠ |
| २१) उसले फेरि देख्यो । | ثُمَّ نَظَرَ ٢١ |
| २२) फेरि निधार खुम्च्यायो र मुख बिगारिहाल्यो । | ثُمَّ عَبَسَ وَبَسَرَ ٢٢ |
| २३) अनि पिठ्यू फर्काइ हिंड्यो र घमण्ड गऱ्यो । | ثُمَّ أَدۡبَرَ وَٱسۡتَكۡبَرَ ٢٣ |
| २४) अनि भन्नथाल्यो कि यो त मात्र जादू । हो, जुन नक्कल गरिएको छ । | فَقَالَ إِنۡ هَٰذَآ إِلَّا سِحۡرٞ يُؤۡثَرُ ٢٤ |
| २५) यो मात्र मानिसको वाणी नै हो । | إِنۡ هَٰذَآ إِلَّا قَوۡلُ ٱلۡبَشَرِ ٢٥ |
| २६) हामीले शीघ्र नै उसलाई नर्कमा हाल्ने छौं । | سَأُصۡلِيهِ سَقَرَ ٢٦ |
| २७) र तिमीलाई के थाहा कि "नर्क" के हो ? | وَمَآ أَدۡرَىٰكَ مَا سَقَرُ ٢٧ |

لَا تُبْقِيْ وَلَا تَذَرُ ﴿٢٨﴾

२८) (आगो हो) जो न बाँकी राख्ने छ न त छोड्दछ ।

لَوَّاحَةٌ لِّلْبَشَرِ ﴿٢٩﴾

२९) र शरीरको छालालाई पोलेर कालो बनाइदिनेछ ।

عَلَيْهَا تِسْعَةَ عَشَرَ ﴿٣٠﴾

३०) त्यसमा उन्नाइस (फरिश्ता) कार्यकर्ताहरू नियुक्त छन् ।

وَمَا جَعَلْنَا أَصْحٰبَ النَّارِ إِلَّا مَلٰٓئِكَةً ۙ وَّمَا جَعَلْنَا عِدَّتَهُمْ إِلَّا فِتْنَةً لِّلَّذِيْنَ كَفَرُوْا ۙ لِيَسْتَيْقِنَ الَّذِيْنَ أُوْتُوا الْكِتٰبَ وَيَزْدَادَ الَّذِيْنَ اٰمَنُوْٓا إِيْمَانًا وَّلَا يَرْتَابَ الَّذِيْنَ أُوْتُوا الْكِتٰبَ وَالْمُؤْمِنُوْنَ ۙ وَلِيَقُوْلَ الَّذِيْنَ فِيْ قُلُوْبِهِمْ مَّرَضٌ وَّالْكٰفِرُوْنَ مَاذَآ أَرَادَ اللّٰهُ بِهٰذَا مَثَلًا ۗ كَذٰلِكَ يُضِلُّ اللّٰهُ مَنْ يَّشَآءُ وَيَهْدِيْ مَنْ يَّشَآءُ ۗ وَمَا يَعْلَمُ جُنُوْدَ رَبِّكَ إِلَّا هُوَ ۗ وَمَا هِيَ إِلَّا ذِكْرٰى لِلْبَشَرِ ﴿٣١﴾

३१) र हामीले नर्कको द्वारपालहरू फरिश्ताहरूलाई बनाएका छौं र हामीले उनीहरूको संख्या काफिरहरूको परीक्षाको निम्ति निर्धारित गरेका छौं, यसकारण कि किताबवालाले विश्वास गरुन् र मोमिनहरूको ईमान अरु धेरै बढोस् र किताब मान्नेहरू र मोमिनले शंका नगरुन् र जुन मानिसहरूको हृदयमा रोग छ, उनी र काफिरहरूले भनुन् कि यस दृष्टान्तबाट अल्लाहको के उद्देश्य छ ? यस्तै प्रकारले अल्लाहले जसलाई चाहन्छ, मार्गविचलित गर्दछ र जसलाई चाहन्छ मार्गदर्शन गर्दछ । तिम्रो पालनकर्ताका लस्करहरूलाई उस बाहेक कोही जान्दैन र यो त आदमका सन्ततिका लागि उपदेश र शिक्षा सामग्री हो ।

كَلَّا وَالْقَمَرِ ﴿٣٢﴾

३२) साँचो भन्दछु (हामीलाई) चाँदको क़सम ।

وَاللَّيْلِ إِذْ أَدْبَرَ ﴿٣٣﴾

३३) र रातको जब कि त्यसले पछाडि हट्दछ ।

وَالصُّبْحِ إِذَآ أَسْفَرَ ﴿٣٤﴾

३४) र प्रातः कालको जब कि त्यो प्रकाशित भइहालोस् ।

إِنَّهَا لَإِحْدَى الْكُبَرِ ﴿٣٥﴾

३५) निश्चय नै नर्क ठूलो कुराहरू मध्ये एक हो ।

نَذِيرًا لِّلْبَشَرِ ﴿٣٦﴾

३६) मानिसहरूको निम्ति भयको कारण ।

لِمَن شَآءَ مِنكُمْ أَن يَتَقَدَّمَ أَوْ يَتَأَخَّرَ ﴿٣٧﴾

३७) तीमध्ये त्यस व्यक्तिको निम्ति जो अगाडि बढ्न चाहन्छ वा पछाडि हट्न चाहन्छ ।

كُلُّ نَفْسٍۭ بِمَا كَسَبَتْ رَهِينَةٌ ﴿٣٨﴾

३८) हरेक व्यक्ति आफ्नो कर्मको बदलामा धितो राखिएको छ ।

إِلَّآ أَصْحَٰبَ الْيَمِينِ ﴿٣٩﴾

३९) तर दायाँ हात वालाहरू ।

فِى جَنَّٰتٍ يَتَسَآءَلُونَ ﴿٤٠﴾

४०) उनीहरू स्वर्गहरूमा बसेका हुने छन् र सवाल गर्नेछन् ।

عَنِ الْمُجْرِمِينَ ﴿٤١﴾

४१) अपराधीहरू सँग,

مَا سَلَكَكُمْ فِى سَقَرَ ﴿٤٢﴾

४२) (कि) तिमीलाई कुन कुरोले नर्कमा ल्यायो ?

قَالُوا۟ لَمْ نَكُ مِنَ الْمُصَلِّينَ ﴿٤٣﴾

४३) उनीहरूले जवाफ दिनेछन् कि हामी नमाजी थिएनौं ।

وَلَمْ نَكُ نُطْعِمُ الْمِسْكِينَ ﴿٤٤﴾

४४) र न निमुखाहरूलाई (मिस्कीन) खाना खुवाउँथ्यौं,

وَكُنَّا نَخُوضُ مَعَ الْخَآئِضِينَ ﴿٤٥﴾

४५) र हामीले विवाद गर्ने असत्यवादीहरूका साथमा मिलेर व्यस्त हुने गर्दथ्यौं ।

وَكُنَّا نُكَذِّبُ بِيَوْمِ الدِّينِ ﴿٤٦﴾

४६) र बदलाको दिन (कियामत) लाई असत्य ठहराउँथ्यौ ।

حَتّٰىٓ اَتٰىنَا الْيَقِيْنُ ؕ﴿٤٧﴾

४७) यहाँसम्म कि हामीलाई मृत्यु आइलाग्यो ।

فَمَا تَنْفَعُهُمْ شَفَاعَةُ الشّٰفِعِيْنَ ؕ﴿٤٨﴾

४८) अतः उनीहरूको हकमा सिफारिश गर्नेहरूको सिफारिशले कुनै फाइदा दिने छैन ।

فَمَا لَهُمْ عَنِ التَّذْكِرَةِ مُعْرِضِيْنَ ۙ﴿٤٩﴾

४९) उनीहरूलाई के भएको छ कि उपदेशबाट मुख फर्काई राखेका छन् ।

كَاَنَّهُمْ حُمُرٌ مُّسْتَنْفِرَةٌ ۙ﴿٥٠﴾

५०) जस्तो कि तर्सेको गधहा हुन् ।

فَرَّتْ مِنْ قَسْوَرَةٍ ؕ﴿٥١﴾

५१) जो बाघ देखेर भागेका छन् ।

بَلْ يُرِيْدُ كُلُّ امْرِئٍ مِّنْهُمْ اَنْ يُّؤْتٰى صُحُفًا مُّنَشَّرَةً ۙ﴿٥٢﴾

५२) बरु उनीहरूमध्ये प्रत्येक व्यक्ति चाहन्छ कि उसलाई खुल्ला किताबहरू दिइयोस् ।

كَلَّا ؕ بَلْ لَّا يَخَافُوْنَ الْاٰخِرَةَ ؕ﴿٥٣﴾

५३) यस्तो कहिल्यै हुनेछैन । (सत्यता यो छ कि) उनीहरू कयामत बाट निर्भिक छन् ।

كَلَّآ اِنَّهٗ تَذْكِرَةٌ ۚ﴿٥٤﴾

५४) साँचो कुरा त यो हो कि कुरआन एउटा उपदेश हो ।

فَمَنْ شَآءَ ذَكَرَهٗ ؕ﴿٥٥﴾

५५) अब जसले चाहन्छ त्यसबाट उपदेश हासिल गरोस् ।

وَمَا يَذْكُرُوْنَ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ ؕ هُوَ اَهْلُ التَّقْوٰى وَاَهْلُ الْمَغْفِرَةِ ۧ﴿٥٦﴾

५६) र त्यतिखेर नै उपदेश हासिल गर्छन् जब अल्लाहले चाहन्छ, ऊ यस योग्य छ कि उसको भय गरियोस् र यस योग्य पनि कि क्षमा गरोस् ।

# सूरतुल् क़ियामः -७५




सूरतुल् क़ियामः मक्की हो, यसमा ४० आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

| | |
|---|---|
| १) म क़ियामतको दिनको कसम खान्छु, | لَآ اُقْسِمُ بِيَوْمِ الْقِيٰمَةِ ۙ﴿١﴾ |
| २) र म कसम खान्छु त्यस नफ्सको (आत्मा) जो निन्दा गर्नेवाला हो । | وَلَآ اُقْسِمُ بِالنَّفْسِ اللَّوَّامَةِ ﴿٢﴾ |
| ३) के मानिसले यो ठान्दछ कि हामीले कदापि उसका हाडहरूलाई एकत्र गर्ने छैनौं ? | اَيَحْسَبُ الْاِنْسَانُ اَلَّنْ نَّجْمَعَ عِظَامَهٗ ؕ﴿٣﴾ |
| ४) अवश्य गर्ने छौं (र) हामी यस कुरामा सामर्थ्यवान छौं कि उसका औंलाका टुप्पाहरू दुरुस्त गरिदेऔं। | بَلٰى قٰدِرِيْنَ عَلٰٓى اَنْ نُّسَوِّيَ بَنَانَهٗ ﴿٤﴾ |
| ५) (होइन) बरु मानिसले चाहन्छ कि आफ्नो अगाडि-अगाडि अवज्ञा गर्दै जावोस् । | بَلْ يُرِيْدُ الْاِنْسَانُ لِيَفْجُرَ اَمَامَهٗ ۚ﴿٥﴾ |
| ६) सोध्छ कि क़ियामतको दिन कहिले आउँछ ? | يَسْـَٔلُ اَيَّانَ يَوْمُ الْقِيٰمَةِ ؕ﴿٦﴾ |
| ७) जब आँखाहरू तिर्मीराइहाल्नेछन् । | فَاِذَا بَرِقَ الْبَصَرُ ۙ﴿٧﴾ |
| ८) र चन्द्र प्रकाशहीन भइहाल्नेछ । | وَخَسَفَ الْقَمَرُ ۙ﴿٨﴾ |
| ९) र सूर्य र चन्द्र एकत्रित गरिनेछन् । | وَجُمِعَ الشَّمْسُ وَالْقَمَرُ ۙ﴿٩﴾ |
| १०) त्यस दिन मानिसले भन्नेछ कि आज भागेर जाने ठाउँ कहाँ छ ? | يَقُوْلُ الْاِنْسَانُ يَوْمَئِذٍ اَيْنَ الْمَفَرُّ ۚ﴿١٠﴾ |

| | |
|---|---|
| ११) निःसन्देह कुनै शरणस्थल छैन । | كَلَّا لَا وَزَرَ ﴿١١﴾ |
| १२) आज त तिम्रो पालनकर्ता तिरै चैन पाइने ठाउँ छ । | إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمُسْتَقَرُّ ﴿١٢﴾ |
| १३) मानिसहरूलाई आज त्यसले अगाडि बढाएको र पछाडि छाडेको कुराहरू सँग अवगत गराइनेछ । | يُنَبَّأُ الْإِنسَانُ يَوْمَئِذٍ بِمَا قَدَّمَ وَأَخَّرَ ﴿١٣﴾ |
| १४) बरु मानिस स्वयं आफ्नो साक्षी छ । | بَلِ الْإِنسَانُ عَلَىٰ نَفْسِهِ بَصِيرَةٌ ﴿١٤﴾ |
| १५) यद्यपि उसले जति क्षमायाचना गर्न खोजोस् । | وَلَوْ أَلْقَىٰ مَعَاذِيرَهُ ﴿١٥﴾ |
| १६) र (हे मोहम्मद स. !) कुरआनलाई छिटै कण्ठस्थ गर्न आफ्नो जिब्रो नचलाउनुस् । | لَا تُحَرِّكْ بِهِ لِسَانَكَ لِتَعْجَلَ بِهِ ﴿١٦﴾ |
| १७) त्यसलाई एकत्रित गर्नु र उसलाई पठनीय बनाउनु हाम्रो जिम्मा छ । | إِنَّ عَلَيْنَا جَمْعَهُ وَقُرْآنَهُ ﴿١٧﴾ |
| १८) अतः जब हामीले त्यसलाई पढ्छौ तब तपाईले त्यस पढाईको अनुशरण गर्नुस् । | فَإِذَا قَرَأْنَاهُ فَاتَّبِعْ قُرْآنَهُ ﴿١٨﴾ |
| १९) अनि हाम्रो जिम्मामा छ उसको स्पष्टिकरण गर्नु । | ثُمَّ إِنَّ عَلَيْنَا بَيَانَهُ ﴿١٩﴾ |
| २०) होइन, होइन तिमी शीघ्र प्राप्त हुने कुरा सित प्रेम गर्दछौ । | كَلَّا بَلْ تُحِبُّونَ الْعَاجِلَةَ ﴿٢٠﴾ |
| २१) र आखिरतलाई (परलोकलाई) छोडिराखेका छौ, | وَتَذَرُونَ الْآخِرَةَ ﴿٢١﴾ |
| २२) त्यस दिन धेरै अनुहारहरू प्रफुल्लित र गौरवान्वित हुनेछन्, | وُجُوهٌ يَوْمَئِذٍ نَّاضِرَةٌ ﴿٢٢﴾ |

إِلَىٰ رَبِّهَا نَاظِرَةٌ ﴿٢٣﴾

२३) आफ्नो पालनकर्तातिर (साक्षत्कार प्राप्त गर्न) देखि राखेका हुनेछन् ।

وَوُجُوهٌ يَوْمَئِذٍۭ بَاسِرَةٌ ﴿٢٤﴾

२४) र कैयन् अनुहारहरू त्यस दिन उदास हुनेछन् ।

تَظُنُّ أَن يُفْعَلَ بِهَا فَاقِرَةٌ ﴿٢٥﴾

२५) बुझ्नेछन् कि उनीहरूमाथि ठूलो विपदा आउनेवाला छ ।

كَلَّآ إِذَا بَلَغَتِ ٱلتَّرَاقِيَ ﴿٢٦﴾

२६) होइन-होइन जब प्राण कण्ठसम्म आइपुग्ने छ ।

وَقِيلَ مَنْ ۜ رَاقٍ ﴿٢٧﴾

२७) र भनिनेछः कि कोही झाडफूँक गर्नेवाला छ ?

وَظَنَّ أَنَّهُ ٱلْفِرَاقُ ﴿٢٨﴾

२८) र त्यसले जान्दछ कि अब सबैबाट विदाईको समय छ ।

وَٱلْتَفَّتِ ٱلسَّاقُ بِٱلسَّاقِ ﴿٢٩﴾

२९) र एउटा खुट्टा अर्को खुट्टासित जोडिनेछ ।

إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ ٱلْمَسَاقُ ﴿٣٠﴾

३०) आज तिमीले आफ्नो पालनकर्तातिर प्रस्थान गर्नुछ ।

فَلَا صَدَّقَ وَلَا صَلَّىٰ ﴿٣١﴾

३१) तर उसले नत सत्य मान्यो न नमाज पढ्यो।

وَلَٰكِن كَذَّبَ وَتَوَلَّىٰ ﴿٣٢﴾

३२) बरु झूठो ठहरायो र विमुख भयो ।

ثُمَّ ذَهَبَ إِلَىٰٓ أَهْلِهِۦ يَتَمَطَّىٰٓ ﴿٣٣﴾

३३) अनि आफ्ना घरवालाहरूको पासमा घमण्ड गर्दै हिंडिहाल्यो ।

أَوْلَىٰ لَكَ فَأَوْلَىٰ ﴿٣٤﴾

३४) अफशोच छ तिमीमाथि, झन् धिक्कार छ ।

ثُمَّ أَوْلَىٰ لَكَ فَأَوْلَىٰٓ ﴿٣٥﴾

३५) धिक्कार छ र खराबी छ तिमीमाथि ।

أَيَحْسَبُ ٱلْإِنسَٰنُ أَن يُتْرَكَ سُدًى ﴿٣٦﴾

३६) के मानिसले यो ठान्दछ कि उसलाई यस्तै छाडिदिइनेछ ?

| | |
|---|---|
| ३७) के ऊ एउटा बाक्लो पानीको (वीर्यको) एक थोपा थिएन? जसलाई टपकाइएको थियो ? | اَلَمْ يَكُ نُطْفَةً مِّنْ مَّنِيٍّ يُّمْنٰى ﴿٣٧﴾ |
| ३८) फेरि ऊ रगतको डल्लो भयो, अनि अल्लाहले उसलाई पैदा गरी ठिकठाक गऱ्यो । | ثُمَّ كَانَ عَلَقَةً فَخَلَقَ فَسَوّٰى ﴿٣٨﴾ |
| ३९) अनि उसका जोडाहरू बनायो, पुरुष र स्त्री । | فَجَعَلَ مِنْهُ الزَّوْجَيْنِ الذَّكَرَ وَالْاُنْثٰى ﴿٣٩﴾ |
| ४०) त के उसलाई यस कुरामा सामर्थ्य छैन कि मृतकहरूलाई जीवित पारिहलोस् । | اَلَيْسَ ذٰلِكَ بِقٰدِرٍ عَلٰٓى اَنْ يُّحْيِۦَ الْمَوْتٰى ﴿٤٠﴾ |



# सूरतुल् इन्सान-७६




सूरतुल् इन्सान मदनी हो, यसमा ३१ आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

هَلْ أَتٰى عَلَى الْإِنْسَانِ حِيْنٌ مِّنَ الدَّهْرِ لَمْ يَكُنْ شَيْئًا مَّذْكُوْرًا ①

१) निःसन्देह मानवमाथि कालखण्डको एउटा यस्तो समय पनि बितेको छ जब कि ऊ कुनै उल्लेख्य कुरा थिएन ।

إِنَّا خَلَقْنَا الْإِنْسَانَ مِنْ نُّطْفَةٍ أَمْشَاجٍ ۖ نَّبْتَلِيْهِ فَجَعَلْنٰهُ سَمِيْعًا بَصِيْرًا ②

२) हामीले मनुष्यलाई एउटा मिश्रित वीर्यबाट परीक्षाको लागि सृष्टि गर्यौं, अनि हामीले उसलाई सुन्ने र देख्नेवाला बनाइदियौं ।

إِنَّا هَدَيْنٰهُ السَّبِيْلَ إِمَّا شَاكِرًا وَّإِمَّا كَفُوْرًا ③

३) हामीले उसलाई मार्ग देखायौं, अब चाहे ऊ कृतज्ञ बनोस् वा कृतघ्न ।

إِنَّآ أَعْتَدْنَا لِلْكٰفِرِيْنَ سَلٰسِلَا۟ وَأَغْلٰلًا وَّسَعِيْرًا ④

४) निश्चित रूपले हामीले इन्कार गर्नेहरूको निम्ति हतकडी र तौक र प्रज्वलित आगो तयार गरेका छौं ।

إِنَّ الْأَبْرَارَ يَشْرَبُوْنَ مِنْ كَأْسٍ كَانَ مِزَاجُهَا كَافُوْرًا ⑤

५) निश्चय नै सदाचारी मानसिहरूले यस्तो पेय पदार्थ पिउनेछन् जसमा काफूरको मिश्रण हुनेछ ।

عَيْنًا يَّشْرَبُ بِهَا عِبَادُ اللّٰهِ يُفَجِّرُوْنَهَا تَفْجِيْرًا ⑥

६) यो एउटा मूल हो जसबाट अल्लाहका सेवकहरूले पिउनेछन् र त्यसबाट नहरहरू निकाल्नेछन् ।

يُوْفُوْنَ بِالنَّذْرِ وَيَخَافُوْنَ يَوْمًا كَانَ شَرُّهٗ مُسْتَطِيْرًا ⑦

७) यिनीहरूले नजर (मन्नत) पूर्ण गर्दछन् र त्यस दिनबाट तर्सन्छन् जसको आपदा चारैतिर व्यापक हुनेछ ।

وَيُطْعِمُونَ الطَّعَامَ عَلَىٰ حُبِّهِ مِسْكِينًا وَيَتِيمًا وَأَسِيرًا ﴿٨﴾

८) र अल्लाह सँगको प्रेममा (स्वयं खानको इच्छा भएपनि) निमुखा, अनाथहरू र कैदीरुलाई खाना खुवाउँछन् ।

إِنَّمَا نُطْعِمُكُمْ لِوَجْهِ اللَّهِ لَا نُرِيدُ مِنكُمْ جَزَاءً وَلَا شُكُورًا ﴿٩﴾

९) हामी त केवल अल्लाहको प्रसन्नताको निम्ति तिमीलाई खुवाउँछौ, तिमीसित न कुनै पुरस्कार चाहन्छौं र न कृतज्ञता ज्ञापन ।

إِنَّا نَخَافُ مِن رَّبِّنَا يَوْمًا عَبُوسًا قَمْطَرِيرًا ﴿١٠﴾

१०) हामीलाई आफ्नो पालनकर्तासित त्यस दिनको डर लाग्छ, जो उदासी र अत्यन्त कठोरवाला हुनेछ ।

فَوَقَاهُمُ اللَّهُ شَرَّ ذَٰلِكَ الْيَوْمِ وَلَقَّاهُمْ نَضْرَةً وَسُرُورًا ﴿١١﴾

११) अतः अल्लाहले उनीहरूलाई त्यस दिनको नराम्रो कुराबाट बचाइहाल्यौं र उनीहरूलाई उज्जवलता र खुशी प्रदान गर्‍यो ।

وَجَزَاهُم بِمَا صَبَرُوا جَنَّةً وَحَرِيرًا ﴿١٢﴾

१२) र उनीहरूको संतोषको बदलामा उनीहरूलाई जन्नत र रेशमी वस्त्र प्रदान गर्‍यो ।

مُّتَّكِئِينَ فِيهَا عَلَى الْأَرَائِكِ ۖ لَا يَرَوْنَ فِيهَا شَمْسًا وَلَا زَمْهَرِيرًا ﴿١٣﴾

१३) यिनीहरूले त्यहाँ पलङ्गमाथि तकिया लगाएर बसेका हुनेछन् त्यहाँ न सूर्यको गर्मी देख्नेछन् न जाडोको तीव्रता ।

وَدَانِيَةً عَلَيْهِمْ ظِلَالُهَا وَذُلِّلَتْ قُطُوفُهَا تَذْلِيلًا ﴿١٤﴾

१४) र ती स्वर्गका छायाँहरू उनीमाथि झूलेका हुनेछन् र त्यसका फलका गुच्छाहरू तल झुण्डिएका हुनेछन् ।

وَيُطَافُ عَلَيْهِم بِآنِيَةٍ مِّن فِضَّةٍ وَأَكْوَابٍ كَانَتْ قَوَارِيرَا ﴿١٥﴾

१५) (सेवकहरू) चाँदीका भाडाहरू र शीशाका बर्तन लिएर उनीहरूको चारैतिर घुम्नेछन् ।

१६) शिशा पनि चाँदीको हुनेछन् । जसलाई ठीक-ठीक मात्रानुसार बनाएको हुनेछ ।

قَوَارِيرَاْ مِن فِضَّةٍ قَدَّرُوهَا تَقْدِيرًا ﴿١٦﴾

१७) र त्यहाँ उनीहरूलाई यस्तो पेय पिलाइनेछ जसमा सुठोको (जन्जबील) मिसावट हुनेछ ।

وَيُسْقَوْنَ فِيهَا كَأْسًا كَانَ مِزَاجُهَا زَنجَبِيلًا ﴿١٧﴾

१८) यो स्वर्गको एउटा नहरबाट जसको नाम "सलसबील" छ ।

عَيْنًا فِيهَا تُسَمَّىٰ سَلْسَبِيلًا ﴿١٨﴾

१९) र उनीहरूको आस पासमा स-साना केटाहरूले ओहोरदोहोर गर्नेछन् जो सदैव किशोर अवस्थामा रहनेछन् । जब तिमीहरूले उनीहरूलाई देख्दछौ तब ठान्नेछौ कि तिनीहरू छरिएका सच्चा मोती हुन् ।

وَيَطُوفُ عَلَيْهِمْ وِلْدَانٌ مُّخَلَّدُونَ إِذَا رَأَيْتَهُمْ حَسِبْتَهُمْ لُؤْلُؤًا مَّنثُورًا ﴿١٩﴾

२०) स्वर्गमा तिमी जहाँ देख्नेछौ, ठूलो अनुकम्पा र विशाल साम्राज्य देख्नेछौ ।

وَإِذَا رَأَيْتَ ثَمَّ رَأَيْتَ نَعِيمًا وَمُلْكًا كَبِيرًا ﴿٢٠﴾

२१) उनीहरूको शरीरमा मसिनो हरियो रेश्मी वस्त्र र बाक्लो बुट्टेदार रेश्मी वस्त्र हुनेछ, र उनीहरूलाई चाँदीको कंगन पहिऱ्याइने छ र उनको पालनकर्ताले उनीलाई पवित्र पेय पिलाउनेछ ।

عَالِيَهُمْ ثِيَابُ سُندُسٍ خُضْرٌ وَإِسْتَبْرَقٌ وَحُلُّوا أَسَاوِرَ مِن فِضَّةٍ وَسَقَاهُمْ رَبُّهُمْ شَرَابًا طَهُورًا ﴿٢١﴾

२२) यो तिम्रै कर्मको पुरस्कार हो र तिम्रो प्रयासको सम्मान गरियो ।

إِنَّ هَٰذَا كَانَ لَكُمْ جَزَاءً وَكَانَ سَعْيُكُم مَّشْكُورًا ﴿٢٢﴾

२३) निश्चय नै हामीले अत्यन्त व्यवस्थित रूपले तपाईमाथि कुरआन अवतरित गरेका छौं ।

إِنَّا نَحْنُ نَزَّلْنَا عَلَيْكَ الْقُرْآنَ تَنزِيلًا ﴿٢٣﴾

२४) अत: आफ्नो पालनकर्ताको आदेश र निर्णय अनुसार धैर्यले काम गर्नु र उनीहरूमध्ये कुनै गुनाहगार वा कृतघ्नको आज्ञापालन नगर्नु ।

فَاصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تُطِعْ مِنْهُمْ اٰثِمًا اَوْ كَفُوْرًا ﴿٢٤﴾

२५) र प्रात:काल र सन्ध्याकालको समयमा आफ्नो पालनकर्ताको नामको स्मरण गर्नु ।

وَاذْكُرِ اسْمَ رَبِّكَ بُكْرَةً وَّاَصِيْلًا ﴿٢٥﴾

२६) र रातीको समयमा उसलाई सज्दा (ढोग्ने) गर, र अबेर रातीसम्म उसको गुणगान गर्नेगर ।

وَمِنَ الَّيْلِ فَاسْجُدْ لَهٗ وَسَبِّحْهُ لَيْلًا طَوِيْلًا ﴿٢٦﴾

२७) नि:सन्देह यिनीहरूले छिटै प्राप्त हुने संसार चाहन्छन् र (कयामतका) ठूलो दिनलाई पछाडि छोडिदिन्छन् ।

اِنَّ هٰٓؤُلَآءِ يُحِبُّوْنَ الْعَاجِلَةَ وَيَذَرُوْنَ
وَرَآءَهُمْ يَوْمًا ثَقِيْلًا ﴿٢٧﴾

२८) हामीले उनीहरूलाई सृष्टि गऱ्यौं र हामीले नै उनका जोर्नी र गाँठोहरूलाई बलियो बनायौं र हामीले जतिखेर चाहन्छौं उनी जस्तालाई पूर्णत: परिवर्तन गरिदिन्छौं ।

نَحْنُ خَلَقْنٰهُمْ وَشَدَدْنَآ اَسْرَهُمْ ۚ وَاِذَا شِئْنَا
بَدَّلْنَآ اَمْثَالَهُمْ تَبْدِيْلًا ﴿٢٨﴾

२९) निश्चय नै यो एउटा उपदेश हो, अब जसले चाहन्छ आफ्नो पालनकर्ताको मार्ग ग्रहण गर्न सक्छ ।

اِنَّ هٰذِهٖ تَذْكِرَةٌ ۚ فَمَنْ شَآءَ اتَّخَذَ اِلٰى رَبِّهٖ
سَبِيْلًا ﴿٢٩﴾

३०) र तिमीले चाहन सक्दैनौ, तर जुन अल्लाहले चाहन्छ निसन्देह अल्लाह सर्वज्ञ र तत्वदर्शी छ,

وَمَا تَشَآءُوْنَ اِلَّآ اَنْ يَّشَآءَ اللّٰهُ ۭ اِنَّ اللّٰهَ كَانَ
عَلِيْمًا حَكِيْمًا ﴿٣٠﴾

३१) जसलाई चाहन्छ आफ्नो दयालुतामा प्रवेश गराउँछ र अत्याचारीहरूको निम्ति उसले दु:खद यातना तयार गरेको छ ।

يُّدْخِلُ مَنْ يَّشَآءُ فِيْ رَحْمَتِهٖ ۭ وَالظّٰلِمِيْنَ
اَعَدَّ لَهُمْ عَذَابًا اَلِيْمًا ﴿٣١﴾

# सूरतुल् मुर्सलात-७७



सूरतुल् मुर्सलात मक्की हो, यसमा ५० आयतहरू र २ रुकूअ्हरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) हृदय प्रसन्न गर्दै बग्ने वायुको कसम । — وَالْمُرْسَلٰتِ عُرْفًا ①

२) अनि अत्यन्त प्रचण्ड भइहाल्ने (हवा)को कसम । — فَالْعٰصِفٰتِ عَصْفًا ②

३) र (बादलहरूलाई) उचालेर फिजाउँछन् त्यसको सौगन्ध । — وَّالنّٰشِرٰتِ نَشْرًا ③

४) फेरि सत्य र असत्यलाई अलग-अलग टुक्रा-टुक्रा गरिदिने, — فَالْفٰرِقٰتِ فَرْقًا ④

५) र वह्य ल्याउने फरिश्ताहरूको कसम । — فَالْمُلْقِيٰتِ ذِكْرًا ⑤

६) जुन वहय दोष उतार्ने वा सावधान गर्नको निम्ति हुन्छ । — عُذْرًا اَوْ نُذْرًا ⑥

७) जुन कुराको तिमीलाई वचन दिइन्छ त्यो निश्चय नै पूरा हुनेवाला छ । — اِنَّمَا تُوْعَدُوْنَ لَوَاقِعٌ ⑦

८) अत: जब ताराहरूलाई प्रकाशहीन गरिदिइनेछ । — فَاِذَا النُّجُوْمُ طُمِسَتْ ⑧

९) र जब आकाश क्षतविक्षत गरिदिइनेछ । — وَاِذَا السَّمَآءُ فُرِجَتْ ⑨

१०) र जब पर्वतहरू टुक्रा-टुक्रा गरी उडाइदिइने छन् । — وَاِذَا الْجِبَالُ نُسِفَتْ ⑩

११) र जब रसूलहरूलाई निर्धारित समयमा ल्याइनेछ । — وَاِذَا الرُّسُلُ اُقِّتَتْ ⑪

لِاَیِّ یَوۡمٍ اُجِّلَتۡ ﴿١٢﴾

१२) कुन दिनको निम्ति (यी सबैलाई) स्थगित गरिएको छ ?

لِیَوۡمِ الۡفَصۡلِ ﴿١٣﴾

१३) फैसलाको दिनको निम्ति ।

وَمَاۤ اَدۡرٰىكَ مَا یَوۡمُ الۡفَصۡلِ ﴿١٤﴾

१४) र तिमीलाई के थाहा कि फैसलाको दिन के हो ?

وَیۡلٌ یَّوۡمَىِٕذٍ لِّلۡمُكَذِّبِیۡنَ ﴿١٥﴾

१५) बर्बादी हुन्छ त्यस दिन असत्य ठहराउनेहरूको निम्ति ।

اَلَمۡ نُهۡلِكِ الۡاَوَّلِیۡنَ ﴿١٦﴾

१६) के हामीले पहिलाका मानिसहरूलाई नष्ट गरेनौं ?

ثُمَّ نُتۡبِعُهُمُ الۡاٰخِرِیۡنَ ﴿١٧﴾

१७) अनि हामीले उनीहरूको पछि पछिकालाई ल्यायौं ।

كَذٰلِكَ نَفۡعَلُ بِالۡمُجۡرِمِیۡنَ ﴿١٨﴾

१८) हामीले अपराधीहरूसित यस्तै गर्दैछौं ।

وَیۡلٌ یَّوۡمَىِٕذٍ لِّلۡمُكَذِّبِیۡنَ ﴿١٩﴾

१९) त्यो दिन असत्य ठहराउनेहरूको निम्ति अफसोच छ ।

اَلَمۡ نَخۡلُقۡكُّمۡ مِّنۡ مَّآءٍ مَّهِیۡنٍ ﴿٢٠﴾

२०) के हामीले तिमीलाई तुच्छ जल( वीर्य) बाट सृष्टि गरेनौं ?

فَجَعَلۡنٰهُ فِیۡ قَرَارٍ مَّكِیۡنٍ ﴿٢١﴾

२१) अनि हामीले त्यसलाई बलियो र सुरक्षित ठाउँमा राख्यौं ।

اِلٰى قَدَرٍ مَّعۡلُوۡمٍ ﴿٢٢﴾

२२) एउटा निश्चित समय सम्म ।

فَقَدَرۡنَا ۖ فَنِعۡمَ الۡقٰدِرُوۡنَ ﴿٢٣﴾

२३) फेरि हामीले अनुमान गऱ्यौं र हामी सर्वोत्तम अनुमान गर्नेवाला हौं ।

وَیۡلٌ یَّوۡمَىِٕذٍ لِّلۡمُكَذِّبِیۡنَ ﴿٢٤﴾

२४) विनाश छ त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति ।

اَلَمۡ نَجۡعَلِ الۡاَرۡضَ كِفَاتًا ﴿٢٥﴾

२५) के हामीले धरतीलाई समेटिनेवाला बनाएनौं ?

اَحۡیَآءً وَّاَمۡوَاتًا ﴿٢٦﴾

२६) जीवितलाई र मृतहरूलाई पनि ।

وَّجَعَلْنَا فِيْهَا رَوَاسِيَ شٰمِخٰتٍ وَّاَسْقَيْنٰكُمْ مَّآءً فُرَاتًا ﴿٢٧﴾

२७) र त्यसमाथि हामीले अग्ला-अग्ला पर्वतहरू स्थापित गऱ्यौं । र तिमीहरूलाई संतुष्ट गर्ने मीठो पानी पिलायौं,

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٢٨﴾

२८) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति खराबी (विनाश) छ ।

اِنْطَلِقُوْٓا اِلٰى مَا كُنْتُمْ بِهٖ تُكَذِّبُوْنَ ﴿٢٩﴾

२९) जुन कुरोलाई तिमीले असत्य ठहऱ्याउँथ्यौ सोही नर्कतिर हिंड,

اِنْطَلِقُوْٓا اِلٰى ظِلٍّ ذِيْ ثَلٰثِ شُعَبٍ ﴿٣٠﴾

३०) त्यस छायाँतिर हिंड जसका तीनवटा हाँगाहरू छन्,

لَّا ظَلِيْلٍ وَّلَا يُغْنِيْ مِنَ اللَّهَبِ ﴿٣١﴾

३१) जो वास्तवमा न छायाँ दिन्छ, न त रापबाट सुरक्षा ।

اِنَّهَا تَرْمِيْ بِشَرَرٍ كَالْقَصْرِ ﴿٣٢﴾

३२) नि:सन्देह नर्क आगोको झिल्का फ्याक्दछ जुन(ठूलो) किल्ला जस्ता हुन्छन् ।

كَاَنَّهٗ جِمٰلَتٌ صُفْرٌ ﴿٣٣﴾

३३) त्यो पहेलो रंगका ऊँटहरू जस्तो लाग्छ ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٣٤﴾

३४) आज असत्य ठहऱ्याउनेहरूका निम्ति दुर्गति छ ।

هٰذَا يَوْمُ لَا يَنْطِقُوْنَ ﴿٣٥﴾

३५) आजको दिन त्यो दिन हो कि यिनीहरू बोल्न पनि सक्दैनन् ।

وَلَا يُؤْذَنُ لَهُمْ فَيَعْتَذِرُوْنَ ﴿٣٦﴾

३६) नत उनलाई गलती स्वीकार गरी क्षमायाचना गर्न अनुमति दिइनेछ ।

وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ﴿٣٧﴾

३७) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति खराबी छ ।

هٰذَا يَوْمُ الْفَصْلِ ۚ جَمَعْنٰكُمْ وَالْاَوَّلِيْنَ ﴿٣٨﴾

३८) यो फैसलाको दिन हो, (जसमा) हामीले तिमीलाई र पहिलाका

मानिसहरूलाई एकत्रित गरेका छौं ।

فَإِنْ كَانَ لَكُمْ كَيْدٌ فَكِيدُونِ ﴿٣٩﴾

३९) तसर्थ यदि तिमी मसँग कुनै चाल चल्न सक्छौ भने चलिहाल ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٠﴾

४०) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति अफसोच छ ।

إِنَّ الْمُتَّقِينَ فِي ظِلَالٍ وَعُيُونٍ ﴿٤١﴾

४१) निश्चय नै संयमीहरू छायाँ र झरनाहरूमा हुनेछन् ।

وَفَوَاكِهَ مِمَّا يَشْتَهُونَ ﴿٤٢﴾

४२) र ती फलहरूको बीचमा जुन उनीहरूले रुचाउँछन् ।

كُلُوا وَاشْرَبُوا هَنِيئًا بِمَا كُنْتُمْ تَعْمَلُونَ ﴿٤٣﴾

४३) (हे स्वर्गबासीहरू) जुन कर्म तिमीले गर्दै थियौ, त्यसको प्रतिफल स्वरूप आनन्दसित खाऊ र पिऊ ।

إِنَّا كَذَٰلِكَ نَجْزِي الْمُحْسِنِينَ ﴿٤٤﴾

४४) हामीले भलाई गर्नेवालाहरूका निम्ति यस्तै प्रतिफल दिने गर्दछौं ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٥﴾

४५) यो दिन सत्य नठहऱ्याउनेहरूको निम्ति विनाश छ ।

كُلُوا وَتَمَتَّعُوا قَلِيلًا إِنَّكُمْ مُّجْرِمُونَ ﴿٤٦﴾

४६) (हे नास्तिकहरू) तिमी अलि खाइहाल र आनन्द गरिहाल, वास्तवमा तिमी अपराधी हौ ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٧﴾

४७) त्यस दिन असत्य ठहऱ्याउनेहरूको निम्ति ठूलो विनाश छ ।

وَإِذَا قِيلَ لَهُمُ ارْكَعُوا لَا يَرْكَعُونَ ﴿٤٨﴾

४८) जब उनीसित भनिन्छ कि (अल्लाहको अगाडि) नतमस्तक होऊ, त हुँदैनन् ।

وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٩﴾

४९) त्यस दिन असत्य ठहऱ्याउनेहरूका निम्ति बर्बादी छ ।

فَبِأَيِّ حَدِيثٍ بَعْدَهُ يُؤْمِنُونَ ﴿٥٠﴾

५०) अब यस कुरआन पश्चात उनीहरूले कुन कुरोमा ईमान ल्याउनेछन्?

# सूरतुन् नबा-७८




सूरतुन् नबा मक्की हो, यसमा ४० आयतहरू र २ रुकूअ्हरू छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

عَمَّ يَتَسَآءَلُوْنَ ①

१) (यी) मानिसहरूले कुन कुराको बारेमा सोधपूछ गरिराखेका छन् ?

عَنِ النَّبَاِ الْعَظِيْمِ ②

२) (के) त्यस ठूलो समाचारको बारेमा ?

الَّذِيْ هُمْ فِيْهِ مُخْتَلِفُوْنَ ③

३) जसमा यिनीहरूले मतभेद गरिराखेका छन्,

كَلَّا سَيَعْلَمُوْنَ ④

४) हेर, यिनीहरूले शीघ्र नै थाहापाउने छन् ।

ثُمَّ كَلَّا سَيَعْلَمُوْنَ ⑤

५) अनि यकीनका साथ यिनीहरूले शीघ्र नै थाहा पाउने छन् ।

اَلَمْ نَجْعَلِ الْاَرْضَ مِهٰدًا ⑥

६) के हामीले धरतीलाई ओछ्यान बनाएनौं ?

وَّالْجِبَالَ اَوْتَادًا ⑦

७) र पहाडहरूलाई मेख खम्बा ?

وَّخَلَقْنٰكُمْ اَزْوَاجًا ⑧

८) र हामीले तिमीलाई जोडी-जोडी सृष्टि गर्‍यौं ।

وَّجَعَلْنَا نَوْمَكُمْ سُبَاتًا ⑨

९) र हामीले तिम्रा निद्रालाई आरामको माध्यम बनायौं ।

وَّجَعَلْنَا الَّيْلَ لِبَاسًا ⑩

१०) र रातलाई पर्दा बनायौं ।

وَّجَعَلْنَا النَّهَارَ مَعَاشًا ⑪

११) र दिनलाई जीविकोपार्जनको समय बनायौं ।

وَبَنَيْنَا فَوْقَكُمْ سَبْعًا شِدَادًا ⑫

१२) र तिमीमाथि हामीले सातवटा सुदृढ आकाश निर्मित गर्‍यौं,

وَّجَعَلْنَا سِرَاجًا وَّهَّاجًا ﴿١٣﴾

१३) र एक चम्किलो प्रकाशमान सूर्य बनायौं ।

وَّاَنْزَلْنَا مِنَ الْمُعْصِرٰتِ مَآءً ثَجَّاجًا ﴿١٤﴾

१४) र बादलहरूबाट हामीले पानीको बृष्टि गरायौं ।

لِّنُخْرِجَ بِهٖ حَبًّا وَّنَبَاتًا ﴿١٥﴾

१५) ताकि त्यसबाट अन्न र सब्जी उत्पन्न गरौं,

وَّجَنّٰتٍ اَلْفَافًا ﴿١٦﴾

१६) र बाक्ला घना बगैंचाहरू,

اِنَّ يَوْمَ الْفَصْلِ كَانَ مِيْقَاتًا ﴿١٧﴾

१७) निःसन्देह फैसलाको दिन निश्चित छ,

يَّوْمَ يُنْفَخُ فِى الصُّوْرِ فَتَاْتُوْنَ اَفْوَاجًا ﴿١٨﴾

१८) जुन दिन सूरमा फूँकिनेछ, अनि तिमीहरू समूह-समूहमा आई उपस्थित हुनेछौ ।

وَّفُتِحَتِ السَّمَآءُ فَكَانَتْ اَبْوَابًا ﴿١٩﴾

१९) र आकाश खोलिनेछ, (त्यसमा) ढोकैढोका हुनेछ ।

وَّسُيِّرَتِ الْجِبَالُ فَكَانَتْ سَرَابًا ﴿٢٠﴾

२०) र पहाड चलाइनेछन्, तब तिनीहरू रेत भइहाल्नेछन् ।

اِنَّ جَهَنَّمَ كَانَتْ مِرْصَادًا ﴿٢١﴾

२१) निःसंदेह जहन्नम घातमा छ ।

لِّلطّٰغِيْنَ مَاٰبًا ﴿٢٢﴾

२२) अर्थात् उल्लंघनकारीहरूको बासस्थान हो ।

لّٰبِثِيْنَ فِيْهَآ اَحْقَابًا ﴿٢٣﴾

२३) त्यसमा तिनीहरू वर्षौं वर्षसम्म रहनेछन् ।

لَا يَذُوْقُوْنَ فِيْهَا بَرْدًا وَّلَا شَرَابًا ﴿٢٤﴾

२४) उनीहरू न त्यसमा शीतलताको स्वाद चाख्नेछन् र न कुनै पेयको ।

اِلَّا حَمِيْمًا وَّغَسَّاقًا ﴿٢٥﴾

२५) उम्लिराखेको पानी र बगिराखेका पीप मात्र हुनेछ ।

جَزَآءً وِّفَاقًا ﴿٢٦﴾

२६) उनीहरूले पूरा-पूर प्रतिफल पाउने छन् ।

إِنَّهُمْ كَانُوا لَا يَرْجُونَ حِسَابًا ﴿٢٧﴾

२७) उनीहरूलाई त हिसाबको आशा नै थिएन ।

وَكَذَّبُوا بِآيَاتِنَا كِذَّابًا ﴿٢٨﴾

२८) र निडर भएर उनीहरूले हाम्रा आयतहरूको उपहास गर्दथे ।

وَكُلَّ شَيْءٍ أَحْصَيْنَاهُ كِتَابًا ﴿٢٩﴾

२९) हामीले प्रत्येक कुरालाई लेखेर गन्तीमा राखेका छौं ।

فَذُوقُوا فَلَن نَّزِيدَكُمْ إِلَّا عَذَابًا ﴿٣٠﴾

३०) तसर्थ (अब) तिमीले आफ्नो कर्मको स्वाद चाख । हामीले तिमीमाथि यातनाको वृद्धि गर्दै जानेछौं ।

إِنَّ لِلْمُتَّقِينَ مَفَازًا ﴿٣١﴾

३१) निःसन्देह संयमीहरूको निम्ति ठूलो सफलता छ ।

حَدَائِقَ وَأَعْنَابًا ﴿٣٢﴾

३२) बगैचाहरू छन्, र अँगूरहरू छन् ।

وَكَوَاعِبَ أَتْرَابًا ﴿٣٣﴾

३३) नौयवना कुमारी युवतीहरू छिन् ।

وَكَأْسًا دِهَاقًا ﴿٣٤﴾

३४) र शराबका टना टन्न भरिएका गिलासहरू ।

لَّا يَسْمَعُونَ فِيهَا لَغْوًا وَلَا كِذَّابًا ﴿٣٥﴾

३५) उनीहरूले त्यहाँ न त कुनै व्यर्थका कुरा सुन्नेछन्, नत झूठ कुरो सुन्ने छन् ।

جَزَاءً مِّن رَّبِّكَ عَطَاءً حِسَابًا ﴿٣٦﴾

३६) (यिनलाई) तिम्रो पालनकर्ताको तर्फबाट (उनीहरूको राम्रो) कर्मको प्रतिफल हुनेछ,

رَّبِّ السَّمَاوَاتِ وَالْأَرْضِ وَمَا بَيْنَهُمَا الرَّحْمَٰنِ لَا يَمْلِكُونَ مِنْهُ خِطَابًا ﴿٣٧﴾

३७) उसको तर्फबाट जो आकाशहरू र पृथ्वीको र तिनको बीचमा जे छ त्यसको पालनकर्ता हो । र धेरै कृपाशील छ । कसैलाई उनीसित कुराकानी गर्ने अधिकार छैन ।

يَوْمَ يَقُومُ الرُّوحُ وَالْمَلَٰٓئِكَةُ صَفًّا ۖ لَّا يَتَكَلَّمُونَ إِلَّا مَنْ أَذِنَ لَهُ الرَّحْمَٰنُ وَقَالَ صَوَابًا ﴿٣٨﴾

३८) जुन दिन आत्मा र फरिश्ताहरू पंक्तिबद्ध भएर उभिनेछन् तर कोही कुरो गर्न सक्दैन परन्तु जसलाई अललाहले आज्ञा दिन्छ र उसले ठीक कुरो मुखबाट निकाल्नेछ ।

ذَٰلِكَ الْيَوْمُ الْحَقُّ ۖ فَمَن شَآءَ اتَّخَذَ إِلَىٰ رَبِّهِۦ مَـَٔابًا ﴿٣٩﴾

३९) त्यो दिन सत्य (सुनिश्चित) छ । अब जसले चाहन्छ (सत्य कर्म गरेर) आफ्नो पालनकर्ता कहाँ राम्रो ठेगाना बनाओस् ।

إِنَّآ أَنذَرْنَٰكُمْ عَذَابًا قَرِيبًا يَوْمَ يَنظُرُ الْمَرْءُ مَا قَدَّمَتْ يَدَاهُ وَيَقُولُ الْكَافِرُ يَٰلَيْتَنِى كُنتُ تُرَٰبًۢا ﴿٤٠﴾

४०) हामीले तिमीसित छिटै आउने वाला सजायबाट डरायौं । जुनदिन मान्छे आफूले गरेको कमाई देख्नेछ र काफिर भन्ने छन् कि काश हामी माटो भइहालेको भए ।



## सूरतुन् नाज़िआत-७९




सूरतुन् नाज़िआ़त मक्की हो, यसमा ४६ आयतहरू र २ रुकूअ़् छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

وَالنّٰزِعٰتِ غَرْقًا ۙ (١)

१) डुबेर शक्तिले तान्नेहरूको क़सम ।

وَّالنّٰشِطٰتِ نَشْطًا ۙ (٢)

२) गाँठोलाई खोलेर छुटाइदिने वालाहरूको क़सम ।

وَّالسّٰبِحٰتِ سَبْحًا ۙ (٣)

३) र तैर्ने फिर्ने वालाहरूको सौगन्ध ।

فَالسّٰبِقٰتِ سَبْقًا ۙ (٤)

४) फेरि दगुरेर अगाडि हिड्ने वालाहरूको सौगन्ध ।

فَالْمُدَبِّرٰتِ اَمْرًا ۘ (٥)

५) फेरि काम सम्पन्न गर्न उपाय गर्ने वालाहरूको सौगन्ध ।

يَوْمَ تَرْجُفُ الرَّاجِفَةُ ۙ (٦)

६) जुन दिन काम्ने वाली कम्ने छिन ।

تَتْبَعُهَا الرَّادِفَةُ ۗ (٧)

७) त्यसको पछि-पछि पछाडि आउनेवाली आउने छिन् ।

قُلُوْبٌ يَّوْمَىِٕذٍ وَّاجِفَةٌ ۙ (٨)

८) धेरै मुटुहरू त्यस दिन ढुकुढुक गर्ने छन् ।

اَبْصَارُهَا خَاشِعَةٌ ۘ (٩)

९) जसको दृष्टि तल हुनेछिन् ।

يَقُوْلُوْنَ ءَاِنَّا لَمَرْدُوْدُوْنَ فِى الْحَافِرَةِ ۗ (١٠)

१०) भन्छन् कि के हामी पहिलेको अवस्थामा फर्काइने छौं ?

ءَاِذَا كُنَّا عِظَامًا نَّخِرَةً ۗ (١١)

११) के त्यसबेला जब हामी हड्डीमा परिणत भइसक्ने छौं ।

قَالُوْا تِلْكَ اِذًا كَرَّةٌ خَاسِرَةٌ ۘ (١٢)

१२) भन्दछन कि फेरि यो फर्किनु त नोक्सानी दिनेवाला छ ।

فَإِنَّمَا هِيَ زَجْرَةٌ وَّاحِدَةٌ ﴿١٣﴾

१३) थाहा हुनु पर्छ त्यो त मात्र एउटा डरलाग्दो डाँट हो ।

فَإِذَا هُمْ بِالسَّاهِرَةِ ﴿١٤﴾

१४) कि जसको प्रकट हुनासाथै तिनीहरू एकदमै मैदानमा एकत्रित हुनेछन् ।

هَلْ أَتٰىكَ حَدِيثُ مُوسٰى ﴿١٥﴾

१५) के "मूसा(अ.)को" सूचना तिमीलाई प्राप्त भएको छ ?

إِذْ نَادٰىهُ رَبُّهُ بِالْوَادِ الْمُقَدَّسِ طُوًى ﴿١٦﴾

१६) जबकि उनीलाई उनका पालनकर्ताले पवित्र मैदान "तोआ" मा बोलायो ।

اِذْهَبْ إِلٰى فِرْعَوْنَ إِنَّهُ طَغٰى ﴿١٧﴾

१७) कि तिमी फिरऔनको समक्ष जाऊ, त्यसले आत्याचार गरी राखेको छ ।

فَقُلْ هَلْ لَّكَ إِلٰى أَنْ تَزَكّٰى ﴿١٨﴾

१८) उसलाई भनकि के तिमी सुर्धन चाहन्छौ ?

وَأَهْدِيَكَ إِلٰى رَبِّكَ فَتَخْشٰى ﴿١٩﴾

१९) र यो कि म तेरो पालनकर्ताको बाटो देखाऊँ कि तिमी डरने गर ।

فَأَرٰىهُ الْاٰيَةَ الْكُبْرٰى ﴿٢٠﴾

२०) त्यसपछि उनले उसलाई ठूलो निशानी देखाए ।

فَكَذَّبَ وَعَصٰى ﴿٢١﴾

२१) तर उसले झूठो भन्यो र अवज्ञा गऱ्यो ।

ثُمَّ أَدْبَرَ يَسْعٰى ﴿٢٢﴾

२२) अनि दगुर्दै फर्किहाल्यो ।

فَحَشَرَ فَنَادٰى ﴿٢٣﴾

२३) फेरि सबलाई एकत्रित गऱ्यो र पुकाऱ्यो ।

فَقَالَ أَنَا رَبُّكُمُ الْأَعْلٰى ﴿٢٤﴾

२४) अनि भन्यो तिमी सबैको पालनकर्ता म नै हूँ ।

فَأَخَذَهُ اللّٰهُ نَكَالَ الْاٰخِرَةِ وَالْأُولٰى ﴿٢٥﴾

२५) तब(सबभन्दा उच्च) अल्लाहले पनि परलोक र दुनियाँको सजायमा उसलाई समातिहाल्यो ।

إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِّمَن يَخْشَىٰ ٢٦

२६) जो अल्लाहसित डर मान्छ, उसको निम्ति यसमा पाठ छ ।

ءَأَنتُمْ أَشَدُّ خَلْقًا أَمِ السَّمَاءُ ۚ بَنَاهَا ٢٧

२७) तिमीलाई सृष्टि गर्नु धेरै कठिन काम हो कि आकाशलाई ? अल्लाहले(त) उसलाई बनायो ।

رَفَعَ سَمْكَهَا فَسَوَّاهَا ٢٨

२८) त्यसको छतलाई उच्च बनायो, अनि उसलाई बराबर (ठीक-ठीक) गरिदियो ।

وَأَغْطَشَ لَيْلَهَا وَأَخْرَجَ ضُحَاهَا ٢٩

२९) र त्यसको रातीलाई अन्धकारमय बनायो र दिनमा प्रकट गऱ्यो ।

وَالْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَاهَا ٣٠

३०) र यस पश्चात धरतीलाई समथर गरी विस्तारित गरिदियो ।

أَخْرَجَ مِنْهَا مَاءَهَا وَمَرْعَاهَا ٣١

३१) यसबाट पानी र चारा उमाऱ्यो ।

وَالْجِبَالَ أَرْسَاهَا ٣٢

३२) र त्यसमाथि पहाडहरूलाई मजबूतीका साथ स्थापित गरिदियो ।

مَتَاعًا لَّكُمْ وَلِأَنْعَامِكُمْ ٣٣

३३) यी सबै तिम्रो र तिम्रा चौपायाहरूको फाइदाको निम्ति (छन) ।

فَإِذَا جَاءَتِ الطَّامَّةُ الْكُبْرَىٰ ٣٤

३४) अनि जब त्यो ठूलो विपदा (कयामत) आउनेछ ।

يَوْمَ يَتَذَكَّرُ الْإِنسَانُ مَا سَعَىٰ ٣٥

३५) जुनदिन मानिस आफूले गरेको कामलाई सम्झनेछ ।

وَبُرِّزَتِ الْجَحِيمُ لِمَن يَرَىٰ ٣٦

३६) र सबै देख्नेवालाहरूको सामु नर्क खोलिदिइनेछ ।

فَأَمَّا مَن طَغَىٰ ٣٧

३७) त जसले अटेरी गऱ्यो ।

وَآثَرَ الْحَيَاةَ الدُّنْيَا ٣٨

३८) र सांसारिक जीवनलाइ प्राथमिकता दियो ।

फ़اِنَّ الْجَحِيْمَ هِيَ الْمَاْوٰى ٣٩

३९) त उसको ठेगाना नर्क हुने छ ।

وَاَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهٖ وَنَهَى النَّفْسَ عَنِ الْهَوٰى ٤٠

४०) र जो आफ्नो पालनकर्ताको सामु उभिनुबाट डरमान्थ्यो र आफ्नो मनलाई नराम्रो इच्छाबाट रोकेको थियो ।

فَاِنَّ الْجَنَّةَ هِيَ الْمَاْوٰى ٤١

४१) त त्यसको बासस्थान जन्नत नै हो ।

يَسْـَٔلُوْنَكَ عَنِ السَّاعَةِ اَيَّانَ مُرْسٰىهَا ٤٢

४२) मानिसहरूले तिमीसित कयामतको बारेमा सोध्छन् कि त्यो कहिले आउँछ ।

فِيْمَ اَنْتَ مِنْ ذِكْرٰىهَا ٤٣

४३) त्यसको वर्णन सँग तपाईको के सम्बन्ध ?

اِلٰى رَبِّكَ مُنْتَهٰىهَا ٤٤

४४) त्यो घटित हुने समयको जानकारी त तपाईको पालनकर्तालाई नै छ ।

اِنَّمَآ اَنْتَ مُنْذِرُ مَنْ يَّخْشٰىهَا ٤٥

४५) जो व्यक्ति उसित डर मान्छ तपाई त उसैलाई सावधान गर्नेवाला सम्म हौ ।

كَاَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوْٓا اِلَّا عَشِيَّةً اَوْ ضُحٰىهَا ٤٦

४६) जब उनीहरूले उसलाई देख्नेछन्, तब यस्तो ठान्नेछन् कि मानौं संसारमा एक साँझ वा एक बिहान सम्म मात्र बसेका थिए ।



# सूरतु अबस-८०




सूरतु अबस मक्की हो, यसमा ४२ आयतहरू र १ रुकूअ् छन् ।

| | |
|---|---|
| **शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।** | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ |
| १) उसले रूखापनागरेर मुख फर्कायो । | عَبَسَ وَتَوَلّٰٓى ۙ﴿١﴾ |
| २) किनकि उसको पासमा एउटा अन्धो आयो । | اَنْ جَآءَهُ الْاَعْمٰى ۗ﴿٢﴾ |
| ३) तिमीलाई के थाह शायद उसको भलो हुने थियो । | وَمَا يُدْرِيْكَ لَعَلَّهٗ يَزَّكّٰٓى ۙ﴿٣﴾ |
| ४) अथवा उपदेश हासिल गर्दथ्यो र उपदेशबाट उसलाई फाइदा हुन्थ्यो । | اَوْ يَذَّكَّرُ فَتَنْفَعَهُ الذِّكْرٰى ۗ﴿٤﴾ |
| ५) तर जो लापरवाही गर्दछ । | اَمَّا مَنِ اسْتَغْنٰى ۙ﴿٥﴾ |
| ६) उसैको तर्फ तिमी पूरै ध्यान दिन्छौ । | فَاَنْتَ لَهٗ تَصَدّٰى ۗ﴿٦﴾ |
| ७) हुनत यदि उसले पवित्रता प्राप्त गरेन भने तिमीलाई कुनै दोष आउँदैन । | وَمَا عَلَيْكَ اَلَّا يَزَّكّٰى ۗ﴿٧﴾ |
| ८) र जो तिम्रो पासमा दगुर्दै आयो । | وَاَمَّا مَنْ جَآءَكَ يَسْعٰى ۙ﴿٨﴾ |
| ९) र ऊ (अल्लाहसित) डर्छ पनि । | وَهُوَ يَخْشٰى ۙ﴿٩﴾ |
| १०) उसलाई तिमीले बेवास्ता गर्दछौ । | فَاَنْتَ عَنْهُ تَلَهّٰى ۚ﴿١٠﴾ |
| ११) हेर यो ठीक होइन कुरआन उपदेशको चीज हो । | كَلَّآ اِنَّهَا تَذْكِرَةٌ ۚ﴿١١﴾ |
| १२) तसर्थ जसले चाहोस् त्यसबाट उपदेश प्राप्त गरोस् । | فَمَنْ شَآءَ ذَكَرَهٗ ۘ﴿١٢﴾ |

فِي صُحُفٍ مُّكَرَّمَةٍ ﴿١٣﴾

१३) यो त पवित्र उच्च पत्तिहरूमा अंकित छ ।

مَّرْفُوعَةٍ مُّطَهَّرَةٍ ﴿١٤﴾

१४) जो उच्च ठाउँमा राखिएको र पवित्र छ ।

بِأَيْدِي سَفَرَةٍ ﴿١٥﴾

१५) यस्ता लेख्नेवालाहरूको हातमा (रहेको) छ ।

كِرَامٍ بَرَرَةٍ ﴿١٦﴾

१६) जो प्रतिष्ठित र पवित्र छन् ।

قُتِلَ الْإِنسَانُ مَا أَكْفَرَهُ ﴿١٧﴾

१७) अल्लाहको सजाय, मानिस पनि कति अकृतज्ञ छ ।

مِنْ أَيِّ شَيْءٍ خَلَقَهُ ﴿١٨﴾

१८) अल्लाहले उसलाई कुन कुराबाट सृष्टि गऱ्यो ?

مِن نُّطْفَةٍ خَلَقَهُ فَقَدَّرَهُ ﴿١٩﴾

१९) वीर्यको एउटा थोपाबाट सृष्टि गऱ्यो, अनि त्यसलाई राम्रो अन्दाजमा राख्यो ।

ثُمَّ السَّبِيلَ يَسَّرَهُ ﴿٢٠﴾

२०) र उसको निम्ति मार्ग सरल बनाइदियो ।

ثُمَّ أَمَاتَهُ فَأَقْبَرَهُ ﴿٢١﴾

२१) अनि उसलाई मृत्यु प्रदान गऱ्यो अनि कब्रमा पुराइदियो ।

ثُمَّ إِذَا شَاءَ أَنشَرَهُ ﴿٢٢﴾

२२) फेरि जब चाहन्छ (चिहानबाट) उभ्याइदिनेछ,

كَلَّا لَمَّا يَقْضِ مَا أَمَرَهُ ﴿٢٣﴾

२३) केही सन्देह छैन कि अल्लाहले त्यसलाई जुन आदेश दियो, त्यसले उसलाई पुरा गरेन ।

فَلْيَنظُرِ الْإِنسَانُ إِلَىٰ طَعَامِهِ ﴿٢٤﴾

२४) अनि मानिसले आफ्नो भोजनलाई हेर्नुपर्छ ।

أَنَّا صَبَبْنَا الْمَاءَ صَبًّا ﴿٢٥﴾

२५) हामीले नै धेरै पानी वर्षायौं ।

ثُمَّ شَقَقْنَا الْأَرْضَ شَقًّا ﴿٢٦﴾

२६) फेरि हामीले नै धरतीलाई (चिरेर) टुक्रा-टुक्रा पार्यौं ।

فَأَنْبَتْنَا فِيهَا حَبًّا ﴿٢٧﴾

२७) त्यस पश्चात हामीले नै त्यसमा अन्न उब्जायौं ।

وَعِنَبًا وَقَضْبًا ﴿٢٨﴾

२८) र अंगूर र तरकारी ।

وَزَيْتُونًا وَنَخْلًا ﴿٢٩﴾

२९) र जैतून र खजूरहरू ।

وَحَدَائِقَ غُلْبًا ﴿٣٠﴾

३०) र बाक्ला घना बगैंचाहरू ।

وَفَاكِهَةً وَأَبًّا ﴿٣١﴾

३१) र फल र चाराहरू ।

مَتَاعًا لَكُمْ وَلِأَنْعَامِكُمْ ﴿٣٢﴾

३२) (यी सबै कुरा) तिम्रा प्रयोग र फाइदाका लागि र तिम्रा चौपायाहरूको निम्ति बनायौं ।

فَإِذَا جَاءَتِ الصَّاخَّةُ ﴿٣٣﴾

३३) तसर्थ जब कानै च्यातिने (कियामतको) प्रचण्ड आवाज आउनेछ ।

يَوْمَ يَفِرُّ الْمَرْءُ مِنْ أَخِيهِ ﴿٣٤﴾

३४) त्यसदिन मानिस आफ्ना दाजुभाइहरूबाट ।

وَأُمِّهِ وَأَبِيهِ ﴿٣٥﴾

३५) र आफ्नो आमा र बाबुबाट ।

وَصَاحِبَتِهِ وَبَنِيهِ ﴿٣٦﴾

३६) र आफ्नो श्रीमती र छोराहरूबाट भाग्नेछ ।

لِكُلِّ امْرِئٍ مِنْهُمْ يَوْمَئِذٍ شَأْنٌ يُغْنِيهِ ﴿٣٧﴾

३७) यी मध्ये प्रत्येक व्यक्तिलाई त्यसदिन यस्तो चिन्ता हुनेछ जो उसैको लागि प्रयाप्त हुनेछ ।

وُجُوهٌ يَوْمَئِذٍ مُسْفِرَةٌ ﴿٣٨﴾

३८) कैयन् अनुहारहरू त्यसदिन टल्किरहेका हुनेछन् ।

ضَاحِكَةٌ مُسْتَبْشِرَةٌ ﴿٣٩﴾

३९) हाँस्दै खुशी र आनन्दित हुनेछन् ।

وَوُجُوهٌ يَوْمَئِذٍ عَلَيْهَا غَبَرَةٌ ﴿٤٠﴾

तَرْهَقُهَا قَتَرَةٌ ﴿٤١﴾

أُولَٰئِكَ هُمُ الْكَفَرَةُ الْفَجَرَةُ ﴿٤٢﴾

४०) र कैयन् अनुहारहरू त्यस दिन धूल धूसरित हुनेछन् ।

४१) जसमाथि कालोपना छाएको हुनेछ,

४२) यी तिनै काफिर चरित्र दुराचारी मानिसहरू हुनेछन् ।



# सूरतुत् तक्वीर-८१




सूरतुत् तक्वीर मक्की हो, यसमा २९ आयतहरू र २ रुकूअ् छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِذَا الشَّمْسُ كُوِّرَتْ ﴿١﴾

१) जब सूर्यलाई बेरिहालिनेछ,

وَإِذَا النُّجُومُ انكَدَرَتْ ﴿٢﴾

२) र ताराहरूले आफ्नो चमक गुमाउनेछन् ।

وَإِذَا الْجِبَالُ سُيِّرَتْ ﴿٣﴾

३) र जब पहाडहरू चलाइनेछन् ।

وَإِذَا الْعِشَارُ عُطِّلَتْ ﴿٤﴾

४) र जब १० महिने गर्भवती ऊँटनीहरू भगाई हालिनेछिन् ।

وَإِذَا الْوُحُوشُ حُشِرَتْ ﴿٥﴾

५) र जब जंगली जनावरहरू एकत्रित गरिनेछन ।

وَإِذَا الْبِحَارُ سُجِّرَتْ ﴿٦﴾

६) र जब समुन्द्रहरू उत्तेजित गरिनेछन् ।

وَإِذَا النُّفُوسُ زُوِّجَتْ ﴿٧﴾

७) जब आत्माहरू (शरीरसँग) मिलाइनेछन् ।

وَإِذَا الْمَوْءُودَةُ سُئِلَتْ ﴿٨﴾

८) र जब जिउँदै गाडिएको केटीसंग सोधिनेछ, ।

بِأَيِّ ذَنبٍ قُتِلَتْ ﴿٩﴾

९) कि कुन गुनाहको कारण उसलाई मारिएको थियो ।

وَإِذَا الصُّحُفُ نُشِرَتْ ﴿١٠﴾

१०) र जब कर्मपत्र खोलिनेछन् ।

وَإِذَا السَّمَاءُ كُشِطَتْ ﴿١١﴾

११) र जब आकाशको छाला उघारिनेछ ।

وَإِذَا الْجَحِيمُ سُعِّرَتْ ﴿١٢﴾

१२) र जब नर्कको आगो प्रज्जवलित गरिने छ ।

وَإِذَا الْجَنَّةُ أُزْلِفَتْ ﴿١٣﴾

१३) र जब बहिश्त (स्वर्ग) नजीक ल्याइनेछ ।

عَلِمَتْ نَفْسٌ مَّا أَحْضَرَتْ ﴿١٤﴾

१४) तब त्यसदिन हरेक व्यक्तिले थाहा पाइहाल्नेछ कि उसले के लिएर आएको छ ।

فَلَا أُقْسِمُ بِالْخُنَّسِ ﴿١٥﴾

१५) म शपथ लिन्छु ती ताराहरूको जो पछि हटिहाल्छन् ।

الْجَوَارِ الْكُنَّسِ ﴿١٦﴾

१६) र जो घुम्ने र हराइहाल्ने छन् ।

وَاللَّيْلِ إِذَا عَسْعَسَ ﴿١٧﴾

१७) र रातको कसम, जब समाप्त हुनथाल्छ ।

وَالصُّبْحِ إِذَا تَنَفَّسَ ﴿١٨﴾

१८) र प्रातः को कसम जब उदय हुनथाल्छ ।

إِنَّهُ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿١٩﴾

१९) निश्चय नै यो एक आदरणीय सन्देशवाहकले ल्याएको वाणी हो ।

ذِي قُوَّةٍ عِندَ ذِي الْعَرْشِ مَكِينٍ ﴿٢٠﴾

२०) जो शक्तिवाला छ, सिंहासनको मालिक कहाँ जसको उच्च दर्जा छ ।

مُّطَاعٍ ثَمَّ أَمِينٍ ﴿٢١﴾

२१) जसको आदेश आसमानहरूमा मान्य हुन्छ र जो त्यहाँ विश्वसनीय छ ।

وَمَا صَاحِبُكُم بِمَجْنُونٍ ﴿٢٢﴾

२२) र (मक्कावासीहरू !) तिम्रा साथी दिवाना होइनन् ।

وَلَقَدْ رَآهُ بِالْأُفُقِ الْمُبِينِ ﴿٢٣﴾

२३) उनले यस (फरिश्ता) लाई (आकाशको) खुल्ला (पूर्वी) क्षितिजमा देखेका पनि छन् ।

وَمَا هُوَ عَلَى الْغَيْبِ بِضَنِينٍ ﴿٢٤﴾

२४) उनी परोक्षको कुरा बताउन कञ्जूस्यायी पनि गर्दैनन् ।

وَمَا هُوَ بِقَوْلِ شَيْطَانٍ رَّجِيمٍ ﴿٢٥﴾

२५) र यो कुरआन दुष्ट शैतानको कुरो होइन ।

| | |
|---|---|
| २६) फेरि तिमी कता गइरहेका छौ ? | فَأَيْنَ تَذْهَبُونَ ﴿٢٦﴾ |
| २७) यो त सम्पूर्ण संसारको लागि मार्ग दर्शन हो । | إِنْ هُوَ إِلَّا ذِكْرٌ لِّلْعَٰلَمِينَ ﴿٢٧﴾ |
| २८) खास गरी उसको लागि जो तिमीहरू मध्ये सोझो बाटोमा हिंड्न चाहोस् । | لِمَن شَآءَ مِنكُمْ أَن يَسْتَقِيمَ ﴿٢٨﴾ |
| २९) र तिमीले विश्वका पालनकर्ताले नचाहिकन केही पनि चाहन सक्दैनौ । | وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ رَبُّ ٱلْعَٰلَمِينَ ﴿٢٩﴾ |



# सूरतुल् इन्फितार-८२




सूरतुल् इन्फ़ितार मक्की हो, यसमा १९ आयतहरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम — بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

| | |
|---|---|
| १) जब आकाश छतविछ्त भइहाल्नेछ, | إِذَا السَّمَاءُ انْفَطَرَتْ ١ |
| २) र जब ताराहरू झरिहाल्नेछन् । | وَإِذَا الْكَوَاكِبُ انْتَثَرَتْ ٢ |
| ३) र जब समुन्द्र बगेर जानेछन् । | وَإِذَا الْبِحَارُ فُجِّرَتْ ٣ |
| ४) र जब चिहानहरू उत्खनित हुनेछन् । | وَإِذَا الْقُبُوْرُ بُعْثِرَتْ ٤ |
| ५) तब हर व्यक्तिले थाहा पाउने छ कि उसले अगाडि के पठाएको थियो र पछाडि के छोडेको थियो ? | عَلِمَتْ نَفْسٌ مَّا قَدَّمَتْ وَأَخَّرَتْ ٥ |
| ६) हे मानव ! कुन कुराले तिमीलाई आफ्नो उदार पालनकर्ताको विषयमा भ्रममा पारेको छ ? | يٰأَيُّهَا الْإِنْسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيْمِ ٦ |
| ७) (त्यही नहो) जसले तिमीलाई सृष्टि गर्‍यो र फेरि (तिम्रा अङ्ग-प्रत्यङ्गहरूलाई) ठीक-ठीक पारी तिमीलाई सन्तुलित बनायो । | الَّذِيْ خَلَقَكَ فَسَوّٰىكَ فَعَدَلَكَ ٧ |
| ८) र जुन रूपमा चाह्यो, तिमीलाई जोडेर तयार गर्‍यो । | فِيْٓ أَيِّ صُوْرَةٍ مَّا شَاءَ رَكَّبَكَ ٨ |
| ९) केही होइन, बरु तिमीले प्रतिफल दिइने दिनलाई झुठ्लाउँछौ । | كَلَّا بَلْ تُكَذِّبُوْنَ بِالدِّيْنِ ٩ |
| १०) जबकि तिमीमाथि निगरानी गर्नेहरू नियुक्त छन् । | وَإِنَّ عَلَيْكُمْ لَحٰفِظِيْنَ ١٠ |

| | |
|---|---|
| ११) प्रतिष्ठित लेख्नेहरू नियुक्त छन् । | كِرَامًا كَاتِبِينَ ﴿١١﴾ |
| १२) तिमीले जे गर्दछौ, (त्यसलाई) उनीहरू जान्दछन् । | يَعْلَمُونَ مَا تَفْعَلُونَ ﴿١٢﴾ |
| १३) निःसन्देह सत्कर्मी मानिसहरू स्वर्गका ऐशो आराम र अनुग्रहमा हुनेछन् । | إِنَّ الْأَبْرَارَ لَفِي نَعِيمٍ ﴿١٣﴾ |
| १४) र निःसंदेह दूराचारीहरू नर्कमा हुनेछन् । | وَإِنَّ الْفُجَّارَ لَفِي جَحِيمٍ ﴿١٤﴾ |
| १५) (अर्थात्) प्रतिफलका दिन त्यसमा प्रवेश गर्ने छन् । | يَصْلَوْنَهَا يَوْمَ الدِّينِ ﴿١٥﴾ |
| १६) र त्यसबाट उम्केर जान सक्ने छैनन् । | وَمَا هُمْ عَنْهَا بِغَائِبِينَ ﴿١٦﴾ |
| १७) र तिमीहरूलाई के थाहा कि प्रतिफलको दिन कस्तो छ ? | وَمَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٧﴾ |
| १८) म फेरि भन्छु तिमीलाई के थाहा कि प्रतिफलको दिन कस्तो छ । | ثُمَّ مَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٨﴾ |
| १९) जुन दिन कुनै व्यक्ति कसैको निम्ति कुनै कुराको अधिकारी हुने छैन, र सबै आदेश त्यस दिन अल्लाह कै हुनेछन् । | يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْئًا ۖ وَالْأَمْرُ يَوْمَئِذٍ لِّلَّهِ ﴿١٩﴾ |



# सूरतुल् मुतफ्फिफीन-८३




सूरतुल् मुतफ्फ़िफ़ीन मक्की हो, यसमा ३६ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

| | |
|---|---|
| १) नाप र तौलमा कमी गर्नेहरूलाई ठूलो खराबी छ । | وَيْلٌ لِّلْمُطَفِّفِيْنَ ① |
| २) जब मानिसहरूसित नापेर लिन्छन्, त पूरा-पूरा लिन्छन् । | الَّذِيْنَ اِذَا اكْتَالُوْا عَلَى النَّاسِ يَسْتَوْفُوْنَ ② |
| ३) किन्तु जब उनीहरूलाई नापेर वा तौलेर दिन्छन् त घटाएर दिन्छन् । | وَاِذَا كَالُوْهُمْ اَوْ وَّزَنُوْهُمْ يُخْسِرُوْنَ ③ |
| ४) के यिनीहरूलाई थाहा छैन कि उनीहरू मरे पछि पक्कै जीवित पारी उठाइनेछन् । | اَلَا يَظُنُّ اُولٰٓئِكَ اَنَّهُمْ مَّبْعُوْثُوْنَ ④ |
| ५) (अर्थात्) एउटा ठूलो दिनमा । | لِيَوْمٍ عَظِيْمٍ ⑤ |
| ६) जुन दिन सबै मानिसहरू पालनकर्ताको सामुन्ने उभिनेछन् ? | يَّوْمَ يَقُوْمُ النَّاسُ لِرَبِّ الْعٰلَمِيْنَ ⑥ |
| ७) नि:सन्देह दुराचारीहरूको किताब (कर्म पत्रहरू) "सिज्जीनमा" छ । | كَلَّآ اِنَّ كِتٰبَ الْفُجَّارِ لَفِيْ سِجِّيْنٍ ⑦ |
| ८) र तिमीलाई के थाहा कि सिज्जीन के हो ? | وَمَآ اَدْرٰىكَ مَا سِجِّيْنٌ ⑧ |
| ९) यो त लेखिएको पंज्जिका हो । | كِتٰبٌ مَّرْقُوْمٌ ⑨ |
| १०) त्यस दिन झूठा ठहराउनेहरूलाई ठूलो खराबी (धिक्कार) छ । | وَيْلٌ يَّوْمَئِذٍ لِّلْمُكَذِّبِيْنَ ⑩ |
| ११) जसले निसाफको दिनलाई असत्य भन्दथे । | الَّذِيْنَ يُكَذِّبُوْنَ بِيَوْمِ الدِّيْنِ ⑪ |

وَمَا يُكَذِّبُ بِهِۦٓ إِلَّا كُلُّ مُعْتَدٍ أَثِيمٍ ﴿١٢﴾

१२) र त्यसलाई झूठो उनीहरूले मात्र ठहराउँछन्, जो सीमा-अतिक्रमण गर्नेवाला अपराधी छन् ।

إِذَا تُتْلَىٰ عَلَيْهِ ءَايَٰتُنَا قَالَ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ﴿١٣﴾

१३) जब उसलाई हाम्रा आयतहरू सुनाइन्छ त भन्दछ कि यो त पहिलाका मानिसहरूका कथाहरू हुन् ।

كَلَّا ۖ بَلْ ۜ رَانَ عَلَىٰ قُلُوبِهِم مَّا كَانُوا۟ يَكْسِبُونَ ﴿١٤﴾

१४) यो होइन, अपितु जसले नराम्रो कर्महरू गर्दछन्, त्यसकारण उनका हृदयहरूमा खिया लागिसकेको हुन्छ ।

كَلَّآ إِنَّهُمْ عَن رَّبِّهِمْ يَوْمَئِذٍ لَّمَحْجُوبُونَ ﴿١٥﴾

१५) निःसन्देह यिनीहरू त्यस दिन आफ्नो पालनकर्ताको दर्शनबाट वंचित हुन्छन् ।

ثُمَّ إِنَّهُمْ لَصَالُوا۟ ٱلْجَحِيمِ ﴿١٦﴾

१६) फेरि निःसन्देह यिनीहरू नर्कमा प्रवेश गर्नेछन् ।

ثُمَّ يُقَالُ هَٰذَا ٱلَّذِى كُنتُم بِهِۦ تُكَذِّبُونَ ﴿١٧﴾

१७) त्यसपछि (उनीसित) भनिनेछ कि यो त्यही कुरा हो, जसलाई तिमीहरूले असत्य ठहराउन्थ्यौ ।

كَلَّآ إِنَّ كِتَٰبَ ٱلْأَبْرَارِ لَفِى عِلِّيِّينَ ﴿١٨﴾

१८) निःसन्देह सुनिराख कि सत्कर्मीहरूका कर्मपात्र "इल्लीयीनमा" छन् ।

وَمَآ أَدْرَىٰكَ مَا عِلِّيُّونَ ﴿١٩﴾

१९) र तिमीलाई के थाहा कि इल्लीयीन के हो ?

كِتَٰبٌ مَّرْقُومٌ ﴿٢٠﴾

२०) त्यो त लेखिएको किताब हो ।

يَشْهَدُهُ ٱلْمُقَرَّبُونَ ﴿٢١﴾

२१) सामीप्य प्राप्त फरिश्ताहरू त्यसको निरीक्षण गर्दछन् ।

إِنَّ ٱلْأَبْرَارَ لَفِى نَعِيمٍ ﴿٢٢﴾

२२) निःसन्देह भलादमीहरू ठूलो अनुग्रहमा हुनेछन् ।

२३) पलंगहरूमाथि हेरी राखेका मसहरीहरूबाट हेर्नेछन् ।

عَلَى الْأَرَآئِكِ يَنظُرُونَ ﴿٢٣﴾

२४) उनीहरूको अनुहारबाटै तिमीलाई ती अनुग्रहहरूको ताजगी र आभाको बोध भईरहनेछ ।

تَعْرِفُ فِي وُجُوهِهِمْ نَضْرَةَ النَّعِيمِ ﴿٢٤﴾

२५) उनीहरूलाई शीलबन्दी विशुद्ध पेय पिलाइनेछ ।

يُسْقَوْنَ مِن رَّحِيقٍ مَّخْتُومٍ ﴿٢٥﴾

२६) जसको शील कस्तुरी को हुनेछ । तसर्थ अनुकम्पा चाहनेले उसैलाई प्राप्त गर्नुमा पतिस्पर्धा गर्नुपर्छ ।

خِتَامُهُ مِسْكٌ ۚ وَفِي ذَٰلِكَ فَلْيَتَنَافَسِ الْمُتَنَافِسُونَ ﴿٢٦﴾

२७) र यसमा तसनीम (स्वर्गको एउटा छहरा) को पनि मिलावट हुनेछ ।

وَمِزَاجُهُ مِن تَسْنِيمٍ ﴿٢٧﴾

२८) त्यो एउटा झरना हो जसको पानी खास खास मानिसहरूले पिउने छन् ।

عَيْنًا يَشْرَبُ بِهَا الْمُقَرَّبُونَ ﴿٢٨﴾

२९) काफिरहरूले संसारमा मोमिनहरूको हाँसो गर्ने गर्दथे ।

إِنَّ الَّذِينَ أَجْرَمُوا كَانُوا مِنَ الَّذِينَ آمَنُوا يَضْحَكُونَ ﴿٢٩﴾

३०) र उनको पासबाट आवत जावत गर्दा त आँखाबाट संकेत गर्दथे ।

وَإِذَا مَرُّوا بِهِمْ يَتَغَامَزُونَ ﴿٣٠﴾

३१) र जब आफ्नो घरतिर फर्कन्थे त ठट्टा गर्ने गर्दथे ।

وَإِذَا انقَلَبُوا إِلَىٰ أَهْلِهِمُ انقَلَبُوا فَكِهِينَ ﴿٣١﴾

३२) र जब ती (मोमिनहरूलाई) देख्दथे त भन्दथे कि यिनीहरू पक्कै मार्गविचलित छन्,

وَإِذَا رَأَوْهُمْ قَالُوا إِنَّ هَٰؤُلَاءِ لَضَالُّونَ ﴿٣٢﴾

३३) जबकि उनीहरूलाई यिनीहरू माथि निरीक्षक बनाएर पठाइएको थिएन ।

وَمَا أُرْسِلُوا عَلَيْهِمْ حَافِظِينَ ﴿٣٣﴾

३४) तसर्थ आज मोमिनहरूले ती काफिरहरू माथि हाँसो गर्नेछन् ।

فَالْيَوْمَ الَّذِيْنَ اٰمَنُوْا مِنَ الْكُفَّارِ يَضْحَكُوْنَ ﴿٣٤﴾

३५) मसनदहरूमाथि (बसी उनीहरूको अवस्था) देखिराखेका हुनेछन् ।

عَلَى الْاَرَآئِكِ ۙ يَنْظُرُوْنَ ﴿٣٥﴾

३६) अतः काफिरहरूलाई उनीहरूका कर्महरूको (पूरा-पूरा) प्रतिफल प्राप्त भइहाल्यो ।

هَلْ ثُوِّبَ الْكُفَّارُ مَا كَانُوْا يَفْعَلُوْنَ ﴿٣٦﴾



## सूरतुल् इन्शिक़ाक़-८४

## سُورَةُ الانْشِقَاق

सूरतुल् इन्शिक़ाक़ मक्की हो, यसमा २५ आयतहरू छन्।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) जब आकाश छिया-छिया परिहाल्नेछ।

إِذَا السَّمَاءُ انْشَقَّتْ ①

२) र आफ्ना पालनकर्ताको आदेशको पालना गर्ने छ र उसलाई पनि यही चाहियो।

وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ②

३) र जब धरतीलाई समतल पारिदिइनेछ।

وَإِذَا الْأَرْضُ مُدَّتْ ③

४) र जे-जति त्यसमा छ, त्यसलाई बाहिर फ्याँकिदिनेछ र (बिल्कुलै) रित्तो भइहाल्नेछ।

وَأَلْقَتْ مَا فِيهَا وَتَخَلَّتْ ④

५) र आफ्नो पालकर्ताको आदेश पालना गर्नेछ। र उसलाई उचित पनि यही छ।

وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ⑤

६) हे मानिस ! तिमी आफ्नो पालनकर्तासित भेट्दा सम्म कोशिश र अनेक काम गरेर उसित भेट गर्नेवाला छौ।

يَا أَيُّهَا الْإِنْسَانُ إِنَّكَ كَادِحٌ إِلَىٰ رَبِّكَ كَدْحًا فَمُلَاقِيهِ ⑥

७) अनि जुन सुकैलाई उसको कर्मपत्र उसको दाहिने हातमा दिइने छ।

فَأَمَّا مَنْ أُوتِيَ كِتَابَهُ بِيَمِينِهِ ⑦

८) त ऊसित सरलताका साथ हिसाब लिइनेछ।

فَسَوْفَ يُحَاسَبُ حِسَابًا يَسِيرًا ⑧

९) र त्यो आफ्ना आफन्तहरूतिर खुशी भएर फर्कनेछ।

وَيَنْقَلِبُ إِلَىٰ أَهْلِهِ مَسْرُورًا ⑨

وَأَمَّا مَنْ أُوتِيَ كِتَٰبَهُۥ وَرَآءَ ظَهْرِهِۦ ﴿١٠﴾

१०) र त्यो व्यक्ति जसको कर्मपत्र उसको पिठ्यूको पछाडिबाट दिइनेछ ।

فَسَوْفَ يَدْعُوا۟ ثُبُورًا ﴿١١﴾

११) त त्यसले मृत्युलाई पुकार्ने छ ।

وَيَصْلَىٰ سَعِيرًا ﴿١٢﴾

१२) र प्रज्वलित नर्कमा (दोजखमा) प्रवेश गर्नेछ ।

إِنَّهُۥ كَانَ فِىٓ أَهْلِهِۦ مَسْرُورًا ﴿١٣﴾

१३) त्यो मानिस आफ्ना आफन्तका मानिसहरूमा मग्न रहन्थ्यो ।

إِنَّهُۥ ظَنَّ أَن لَّن يَحُورَ ﴿١٤﴾

१४) र ठानी राख्थ्यो कि अल्लाहतिर फर्केर जाने छैन ।

بَلَىٰٓ ۚ إِنَّ رَبَّهُۥ كَانَ بِهِۦ بَصِيرًا ﴿١٥﴾

१५) हो, किन होइन ? यद्यपि उसको पालनकर्ताले उसलाई हेरिराखेको थियो ।

فَلَآ أُقْسِمُ بِٱلشَّفَقِ ﴿١٦﴾

१६) मलाई कसम छ डुब्ने बेलाको प्रकाशको ।

وَٱلَّيْلِ وَمَا وَسَقَ ﴿١٧﴾

१७) र रात्रीको कसम र उसद्वारा एकत्रित गरिएका वस्तुहरूको कसम ।

وَٱلْقَمَرِ إِذَا ٱتَّسَقَ ﴿١٨﴾

१८) र चन्द्रको, जबकि त्यो पूर्ण भइहाल्छ ।

لَتَرْكَبُنَّ طَبَقًا عَن طَبَقٍ ﴿١٩﴾

१९) कि तिमीले निश्चय नै एक अवस्थाबाट अर्को अवस्था सम्म पुग्ने छौ ।

فَمَا لَهُمْ لَا يُؤْمِنُونَ ﴿٢٠﴾

२०) त उनीहरूलाई के भएको छ कि ईमान ल्याउँदैनन् ।

وَإِذَا قُرِئَ عَلَيْهِمُ ٱلْقُرْءَانُ لَا يَسْجُدُونَ ۩ ﴿٢١﴾

२१) र जब उनीहरूको अगाडि कुरआन पढिन्छ त ढोग्न(सिज्दा) गर्दैनन् ।

بَلِ ٱلَّذِينَ كَفَرُوا۟ يُكَذِّبُونَ ﴿٢٢﴾

२२) बरु काफिरहरूले झुठ्लाउँछन् ।

وَاللّٰهُ اَعۡلَمُ بِمَا يُوۡعُوۡنَ ۞

२३) यिनीहरूले आफ्ना हृदयमा जुन कुरा लुकाउँछन्, त्यसलाई अल्लाह राम्ररी जान्दछ ।

فَبَشِّرۡهُمۡ بِعَذَابٍ اَلِيۡمٍ ۞

२४) तसर्थ उनीहरूलाई कष्टदायक यातनाको समाचार सुनाइदिनु ।

اِلَّا الَّذِيۡنَ اٰمَنُوۡا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمۡ اَجۡرٌ غَيۡرُ مَمۡنُوۡنٍ ۞

२५) हो, ईमानवालाहरू र असल कर्म गर्नेहरूको निम्ति असीमित र नसकिने पुरस्कार छ ।



# सूरतुल् बुरूज-८५




सूरतुल् बुरूज मक्की हो, यसमा २२ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالسَّمَآءِ ذَاتِ الْبُرُوْجِ ﴿١﴾

१) आकाशको कसम, जसमा तारामण्डल छ ।

وَالْيَوْمِ الْمَوْعُوْدِ ﴿٢﴾

२) र त्यस दिनको कसम जसको वाचा छ ।

وَشَاهِدٍ وَّمَشْهُوْدٍ ﴿٣﴾

३) उपस्थित हुनेवाला र उपस्थित गराइएकाहरूको कसम ।

قُتِلَ اَصْحٰبُ الْاُخْدُوْدِ ﴿٤﴾

४) कि खाल्टो (खन्नेहरू) नष्ट गरिए ।

النَّارِ ذَاتِ الْوَقُوْدِ ﴿٥﴾

५) त्यो एउटा आगो थियो (खाल्टोहरू) जसमा इन्धन ( हालिएको थियो) ।

اِذْ هُمْ عَلَيْهَا قُعُوْدٌ ﴿٦﴾

६) जबकि उनीहरू त्यसका वरिपरि बसेका थिए ।

وَّهُمْ عَلٰى مَا يَفْعَلُوْنَ بِالْمُؤْمِنِيْنَ شُهُوْدٌ ﴿٧﴾

७) र मुस्लिमहरू सँगै जे गर्ने गरेका थिए त्यो आफ्नो सामु देखि रहेका थिए ।

وَمَا نَقَمُوْا مِنْهُمْ اِلَّآ اَنْ يُّؤْمِنُوْا بِاللّٰهِ الْعَزِيْزِ الْحَمِيْدِ ﴿٨﴾

८) यिनीहरूले ती मोमिनहरू सँग (कुनै अन्य अपराधको) बदला लिई रहेका थिएनन्, मात्र यसको लागि कि उनीहरू अल्लाहमाथि ईमान राख्दथे जो अत्यन्त अधिपत्यशाली र प्रशंसनीय छ ।

९) जसको निम्ति आकाशहरू र पृथ्वीहरूको सत्ता छ र अल्लाहको सामु हरेक वस्तु छ ।

الَّذِي لَهُ مُلْكُ السَّمٰوٰتِ وَالْاَرْضِ ۭ وَاللّٰهُ عَلٰي كُلِّ شَيْءٍ شَهِيْدٌ ۙ

१०) निःसंदेह ज-जसले ईमानवाला पुरुष र ईमानवाली स्त्रीहरूलाई दुःख दिए, अनि प्रायश्चित गरेनन्, त उनीहरूको निम्ति नर्कको यातना हुनेछ र पोलिने यातना छ ।

اِنَّ الَّذِيْنَ فَتَنُوا الْمُؤْمِنِيْنَ وَالْمُؤْمِنٰتِ ثُمَّ لَمْ يَتُوْبُوْا فَلَهُمْ عَذَابُ جَهَنَّمَ وَلَهُمْ عَذَابُ الْحَرِيْقِ ۭ

११) निःसन्देह जसले ईमान ल्याए र असल कर्म गरिरहे उनीहरूका निम्ति बगैंचाहरू छन् जसमुनि नहरहरू बगिराखेका छन्, यही नै ठूलो सफलता हो ।

اِنَّ الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ لَهُمْ جَنّٰتٌ تَجْرِيْ مِنْ تَحْتِهَا الْاَنْهٰرُ ڛ ذٰلِكَ الْفَوْزُ الْكَبِيْرُ ۭ

१२) निःसन्देह तिम्रो पालनकर्ताको पकड अत्यन्त कठोर छ ।

اِنَّ بَطْشَ رَبِّكَ لَشَدِيْدٌ ۭ

१३) उसैले पहिलो पटक सृष्टि गर्दछ र उसैले दोस्रो पटक (जीवित) गर्नेछ ।

اِنَّهٗ هُوَ يُبْدِئُ وَيُعِيْدُ ۚ

१४) र त्यो ठूलो मुक्ति दाता र अत्यन्त प्रेम गर्नेवाला छ ।

وَهُوَ الْغَفُوْرُ الْوَدُوْدُ ۙ

१५) सिंहासनको स्वामी, बडो गौरवशाली छ ।

ذُو الْعَرْشِ الْمَجِيْدُ ۙ

१६) जे चाहान्छ गरिहाल्छ ।

فَعَّالٌ لِّمَا يُرِيْدُ ۭ

१७) के तिमीलाई ती सेनाहरूको पनि समाचार पुगेको छ ।

هَلْ اَتٰىكَ حَدِيْثُ الْجُنُوْدِ ۙ

१८) (अर्थात्) फिरऔन र समूदको ।

فِرْعَوْنَ وَثَمُوْدَ ۭ

१९) केही होइन, काफिरहरू त (जानी

بَلِ الَّذِيْنَ كَفَرُوْا فِيْ تَكْذِيْبٍ ۙ

जानी) असत्य कुरा ठह्राउनुमा लागि रहेका छन् ।

وَّاللّٰهُ مِنۡ وَّرَآئِهِمۡ مُّحِيۡطٌ ۟

२०) र अल्लाहले पनि उनीहरूलाई सबै तिरबाट घेरामा हालिसकेको छ ।

بَلۡ هُوَ قُرۡاٰنٌ مَّجِيۡدٌ ۟

२१) बरु यो कुरआन धेरै गौरवशाली छ ।

فِيۡ لَوۡحٍ مَّحۡفُوۡظٍ ۟

२२) लौहे महफूज (सुरक्षित फलाम पट्टीका) मा अंकित (छ) ।



## सूरतुत्तारिक़-८६




सूरतुत्तारिक़ मक्की हो, यसमा १७ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ اللّٰهِ الرَّحۡمٰنِ الرَّحِيۡمِ

१) कसम छ आकाश र रातिमा प्रकाशित हुनेवालाको ।

وَالسَّمَآءِ وَالطَّارِقِۙ ﴿١﴾

२) र तिमीलाई के थाहा कि रातिमा प्रकट हुनेवाला के हो ?

وَمَآ اَدۡرٰىكَ مَا الطَّارِقُۙ ﴿٢﴾

३) त्यो तारा हो, चम्किलो ।

النَّجۡمُ الثَّاقِبُۙ ﴿٣﴾

४) कुनै व्यक्ति यस्तो छैन जसमाथि एउटा फरिश्ता निरीक्षक नियुक्त नहोस् ।

اِنۡ كُلُّ نَفۡسٍ لَّمَّا عَلَيۡهَا حَافِظٌ ؕ ﴿٤﴾

५) मनुष्यलाई आवश्यक छ कि देखोस् कि ऊ कुन कुरोबाट सृष्टि गरिएको छ ।

فَلۡيَنۡظُرِ الۡاِنۡسَانُ مِمَّ خُلِقَ ؕ ﴿٥﴾

६) त्यो एउटा उचालिएको पानीबाट जन्मेको छ ।

خُلِقَ مِنۡ مَّآءٍ دَافِقٍۙ ﴿٦﴾

७) जो पिठ्यू र छातीको बीचबाट निस्कन्छ ।

يَّخۡرُجُ مِنۡۢ بَيۡنِ الصُّلۡبِ وَالتَّرَآئِبِ ؕ ﴿٧﴾

८) निश्चय नै ऊ उसलाई फर्काइदिने (अर्थात् पुनः जीवित पारिदिने) कुरोमा सामर्थ्यवान छ ।

اِنَّهٗ عَلٰى رَجۡعِهٖ لَقَادِرٌ ؕ ﴿٨﴾

९) जुन दिन (मनमा) लुकाइएका कुराहरू जाँचिनेछन् ।

يَوۡمَ تُبۡلَى السَّرَآئِرُۙ ﴿٩﴾

| | |
|---|---|
| १०) त त्यसबेला मानिसको साथमा न त त्यसको शक्ति हुनेछ र न कोही सहायक । | فَمَا لَهُ مِن قُوَّةٍ وَلَا نَاصِرٍ ۝١٠ |
| ११) आकाशको कसम जसले वृष्टि गर्दछ । | وَالسَّمَاءِ ذَاتِ الرَّجْعِ ۝١١ |
| १२) र धरतीको कसम जुन च्यातिनेवाला छ । | وَالْأَرْضِ ذَاتِ الصَّدْعِ ۝١٢ |
| १३) कि यो वाणी "कुरआन" सटीक फैसला गर्नेवाला वाणी हो । | إِنَّهُ لَقَوْلٌ فَصْلٌ ۝١٣ |
| १४) त्यो कुनै ठट्टा होइन । | وَمَا هُوَ بِالْهَزْلِ ۝١٤ |
| १५) उनीहरू एउटा षड्यन्त्र गरिराखेका छन् । | إِنَّهُمْ يَكِيدُونَ كَيْدًا ۝١٥ |
| १६) र मैले पनि एउटा चालचली राखेको छु । | وَأَكِيدُ كَيْدًا ۝١٦ |
| १७) अतः तिमीले काफिरहरूलाई मोहलत दिइहाल, केही दिन उनलाई छाडी दिनु । | فَمَهِّلِ الْكَافِرِينَ أَمْهِلْهُمْ رُوَيْدًا ۝١٧ |



## सूरतुल् अअ्ला-८७




सूरतुल् अअ्ला मक्की हो, यसमा १९ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) (हे पैग़म्बर !) आफ्नो सर्वोच्च पालनकर्ताको नामको गुणगान गर्नु ।

سَبِّحِ اسْمَ رَبِّكَ الْأَعْلَى ﴿١﴾

२) जसले (मानिसलाई) सृष्टि गऱ्यो अनि (त्यसका अङ्गहरूलाई) ठीक (क्रम र समानुपातमा) मिलायो ।

الَّذِي خَلَقَ فَسَوّٰى ﴿٢﴾

३) र जसले ठीक ठाक निर्धारित गऱ्यो, अनि मार्ग देखायो ।

وَالَّذِي قَدَّرَ فَهَدٰى ﴿٣﴾

४) र जसले वनस्पति उमाऱ्यो ।

وَالَّذِي أَخْرَجَ الْمَرْعٰى ﴿٤﴾

५) अनि त्यसलाई सुकाएर कालो रङ्गका ठुटाहरू बनाइदियो ।

فَجَعَلَهُ غُثَاءً أَحْوٰى ﴿٥﴾

६) हामीले तिमीलाई पढाइदिनेछौं, अनि तिमीले बिर्सने छैनौ ।

سَنُقْرِئُكَ فَلَا تَنْسٰى ﴿٦﴾

७) तर जुन अल्लाहले चाहन्छ, ऊ प्रत्यक्ष र परोक्षलाई जान्दछ ।

إِلَّا مَا شَاءَ اللّٰهُ إِنَّهُ يَعْلَمُ الْجَهْرَ وَمَا يَخْفٰى ﴿٧﴾

८) हामीले तपाईंका लागि सजिलो गरिदिनेछौं ।

وَنُيَسِّرُكَ لِلْيُسْرٰى ﴿٨﴾

९) अतः तपाईले उपदेश गर्दै गर्नुस्, यदि उपदेश लाभप्रद छ ।

فَذَكِّرْ إِنْ نَفَعَتِ الذِّكْرٰى ﴿٩﴾

१०) त्यसले उपदेश प्राप्त गरिहाल्छ, जसलाई भय हुनेछ ।

سَيَذَّكَّرُ مَنْ يَخْشٰى ﴿١٠﴾

११) हो, दुर्भाग्यवाला त्यसबाट पन्छिनेछ ।

१२) जो ठूलो आगोमा पर्नेछ ।

१३) अनि त्यसमा न मर्ने छ र न बाँच्नेछ ।

१४) निःसन्देह त्यो सफल भइहाल्यो जसले आफूलाई शुद्ध पाऱ्यो ।

१५) र आफ्नो पालनकर्ताको नामको स्मरण गऱ्यो र नमाज पढ्ने गऱ्यो।

१६) तर तिमीहरूले त सांसारिक भौतिक जीवनलाई प्राथमिकता दिन्छौ ।

१७) जब कि आखिरत धेरै उत्तम र शेष रहनेवाला छ ।

१८) निःसन्देह यही कुरा पहिलाका किताबहरूमा पनि छ ।

१९) अर्थात "इब्राहीम(अ)" र "मूसा(अ.)का" किताबहरूमा ।

وَيَتَجَنَّبُهَا الْأَشْقَى ﴿١١﴾

الَّذِي يَصْلَى النَّارَ الْكُبْرَى ﴿١٢﴾

ثُمَّ لَا يَمُوتُ فِيهَا وَلَا يَحْيَى ﴿١٣﴾

قَدْ أَفْلَحَ مَنْ تَزَكَّى ﴿١٤﴾

وَذَكَرَ اسْمَ رَبِّهِ فَصَلَّى ﴿١٥﴾

بَلْ تُؤْثِرُونَ الْحَيَاةَ الدُّنْيَا ﴿١٦﴾

وَالْآخِرَةُ خَيْرٌ وَأَبْقَى ﴿١٧﴾

إِنَّ هَذَا لَفِي الصُّحُفِ الْأُولَى ﴿١٨﴾

صُحُفِ إِبْرَاهِيمَ وَمُوسَى ﴿١٩﴾



## सूरतुल् ग़ाशियः -८८




सूरतुल् ग़ाशियः मक्की हो, यसमा २६ आयतहरू छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

هَلۡ أَتَىٰكَ حَدِيثُ ٱلۡغَٰشِيَةِ ١

१) के तिमीलाई पनि त्यस घेरीहाल्ने क़ियामतको समाचार पुगेको छ ?

وُجُوهٞ يَوۡمَئِذٍ خَٰشِعَةٌ ٢

२) त्यस दिन धेरै अनुहारहरू अपमानित हुनेछन् ।

عَامِلَةٞ نَّاصِبَةٞ ٣

३) कठिन परिश्रममा परेका, थाकिएका हुनेछन् ।

تَصۡلَىٰ نَارًا حَامِيَةٗ ٤

४) उनी धपधपी बलेको आगोमा प्रवेश गर्नेछन् ।

تُسۡقَىٰ مِنۡ عَيۡنٍ ءَانِيَةٖ ٥

५) उनीहरूलाई उम्लिराखेको स्रोतको तातो पानी पिलाइनेछ ।

لَّيۡسَ لَهُمۡ طَعَامٌ إِلَّا مِن ضَرِيعٖ ٦

६) उनीहरूका लागि काँडावाला रुख बाहेक अरु केही खानेकुरा हुनेछैन ।

لَّا يُسۡمِنُ وَلَا يُغۡنِي مِن جُوعٖ ٧

७) जसले न मोटो गर्नेछ न भोक मेटाउनेछ ।

وُجُوهٞ يَوۡمَئِذٖ نَّاعِمَةٞ ٨

८) त्यसदिन कैयन् अनुहारहरू प्रफुल्लित र संतुष्ट हुनेछन् ।

لِّسَعۡيِهَا رَاضِيَةٞ ٩

९) आफ्नो प्रयासमा प्रसन्न ।

فِي جَنَّةٍ عَالِيَةٖ ١٠

१०) उच्च र शानदार स्वर्गमा हुनेछन् ।

لَّا تَسۡمَعُ فِيهَا لَٰغِيَةٗ ١١

११) जसमा कुनै व्यर्थकुरा सुन्ने छैनन् ।

فِيهَا عَيۡنٞ جَارِيَةٞ ١٢

१२) त्यसमा झरनाहरू प्रवाहित हुनेछन् ।

فِيهَا سُرُرٌ مَّرْفُوعَةٌ ﴿١٣﴾

१३) र अग्ला-अग्ला पलंगहरू हुनेछन् ।

وَأَكْوَابٌ مَّوْضُوعَةٌ ﴿١٤﴾

१४) प्यालाहरू राम्ररी सजाइएर राखिएका हुनेछन्) ।

وَنَمَارِقُ مَصْفُوفَةٌ ﴿١٥﴾

१५) र क्रमैसित मसनदहरू सजाइएका हुनेछन् ।

وَزَرَابِيُّ مَبْثُوثَةٌ ﴿١٦﴾

१६) र मखमली ओच्छ्यानहरू ओछ्याइएका हुनेछन् ।

أَفَلَا يَنظُرُونَ إِلَى الْإِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾

१७) के उनीहरूले ऊँटतिर देख्दैनन् कि तिनीहरू कुन तरिकाले पैदा गरिएका छन् ।

وَإِلَى السَّمَاءِ كَيْفَ رُفِعَتْ ﴿١٨﴾

१८) र आकाशतिर के कस्तो उच्च गरिएकोछ ?

وَإِلَى الْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾

१९) र पहाडतिर के कुन प्रकारले खडा गरिएकोछ ?

وَإِلَى الْأَرْضِ كَيْفَ سُطِحَتْ ﴿٢٠﴾

२०) र धरतीतिर कि कसरी बिछ्याइएको छ?

فَذَكِّرْ إِنَّمَا أَنتَ مُذَكِّرٌ ﴿٢١﴾

२१) तसर्थ तपाईले उपदेश गर्ने गर्नुस् किनकि तपाई मात्र उपदेश गर्नेवाला हौ ।

لَّسْتَ عَلَيْهِم بِمُصَيْطِرٍ ﴿٢٢﴾

२२) तपाई उनीहरूमाथि संरक्षक होइनौ ।

إِلَّا مَن تَوَلَّىٰ وَكَفَرَ ﴿٢٣﴾

२३) हो, जो विमुख हुन्छ र कुफ्र गर्छ ।

فَيُعَذِّبُهُ اللَّهُ الْعَذَابَ الْأَكْبَرَ ﴿٢٤﴾

२४) त अल्लाहले त्यसलाई ठूलो सजाय दिने छ,

إِنَّ إِلَيْنَا إِيَابَهُمْ ﴿٢٥﴾

२५) निःसन्देह उनीहरूलाई हाम्रो पासमा फर्केर आउनुपर्नेछ ।

ثُمَّ إِنَّ عَلَيْنَا حِسَابَهُم ﴿٢٦﴾

२६) अनि हामीले नै उनको हिसाब लिनेछौं ।

# सूरतुल् फ़ज्र-८९




सूरतुल् फ़ज्र मक्की हो, यसमा ३० आयतहरू छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

१) फज्र (उषाकाल) को क़सम ।
وَالْفَجْرِ ۝١

२) र दश रातहरूको क़सम ।
وَلَيَالٍ عَشْرٍ ۝٢

३) र जोड र बिजोड (सम-विसम) को कसम ।
وَّالشَّفْعِ وَالْوَتْرِ ۝٣

४) र रातको क़सम, जब यो जान थाल्छ ।
وَالَّيْلِ اِذَا يَسْرِ ۝٤

५) के यी कुराहरूको क़सम बुद्धिमानीहरूका लागि पर्याप्त छन् ?
هَلْ فِيْ ذٰلِكَ قَسَمٌ لِّذِيْ حِجْرٍ ۝٥

६) के तपाईले देख्नु भएन कि तपाईको पालनकर्ताले आदहरूसँग के गर्‍यो ?
اَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِعَادٍ ۝٦

७) स्तम्भजस्ता "इरम" लामो कदवालाको साथ ।
اِرَمَ ذَاتِ الْعِمَادِ ۝٧

८) यी सम्पूर्ण सृष्टिमा यिनीहरूको सदृश कुनै समुदाय पैदा गरिएको थिएन् ।
الَّتِيْ لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ ۝٨

९) र समूदहरूसँग (के गर्‍यो) जो बेसीमा ठूल ठूला ढुङ्गा काट्दथे ।
وَثَمُوْدَ الَّذِيْنَ جَابُوا الصَّخْرَ بِالْوَادِ ۝٩

१०) र फिरऔनसँग जसले मेखहरू राख्दथ्यो ?
وَفِرْعَوْنَ ذِي الْاَوْتَادِ ۝١٠

الَّذِينَ طَغَوْا فِي الْبِلَادِ ﴿١١﴾

११) यिनीहरू सबैले देशहरूमा अटेरीपना गरिराखेका थिए ।

فَأَكْثَرُوا فِيهَا الْفَسَادَ ﴿١٢﴾

१२) र यहां धेरै उत्पातहरू मचाई राखेका थिए ।

فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ﴿١٣﴾

१३) अन्ततः तिम्रो पालनकर्ताले उनीहरूमाथि यातनाको कोर्रा बर्सायो ।

إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ ﴿١٤﴾

१४) निःसन्देह तिम्रो पालनकर्ता हेरी घातमाछ ।

فَأَمَّا الْإِنسَانُ إِذَا مَا ابْتَلَاهُ رَبُّهُ فَأَكْرَمَهُ وَنَعَّمَهُ فَيَقُولُ رَبِّي أَكْرَمَنِ ﴿١٥﴾

१५) तर मानिसको अवस्था यो छ कि जब उसको रबले उसको परीक्षा गर्दछ र उसलाई प्रतिष्ठा र अनुग्रह प्रदान गर्दछ तब त्यसले भन्दछ कि मेरो पालनकर्ताले मलाई प्रतिष्ठित गऱ्यो ।

وَأَمَّا إِذَا مَا ابْتَلَاهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُ فَيَقُولُ رَبِّي أَهَانَنِ ﴿١٦﴾

१६) र जब उसले उसको परीक्षा यसप्रकार गर्दछ कि उसको जीविका संकुचित गरिदिन्छ । तब उसले भन्दछ कि मेरो रबले मलाई अपमानित गऱ्यो ।

كَلَّا بَل لَّا تُكْرِمُونَ الْيَتِيمَ ﴿١٧﴾

१७) यस्तो कदापि होइन, बरु तिमीहरूले नै अनाथको सम्मान गर्दैनौ ।

وَلَا تَحَاضُّونَ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿١٨﴾

१८) र न गरीबलाई खुवाउनको लागि एक-अर्कालाई प्रोत्साहन गर्दछौ ।

وَتَأْكُلُونَ التُّرَاثَ أَكْلًا لَّمًّا ﴿١٩﴾

१९) र मृतकको सारा माल समेटी खाइदिन्छौ ।

२०) र धनसित अत्यन्त प्रेम गर्दछौ ।

وَّتُحِبُّوْنَ الْمَالَ حُبًّا جَمًّا ۝٢٠

२१) तसर्थ धरतीलाई जब फुटालेर चुर्ण चुर्ण गरी एक समान गरिनेछ ।

كَلَّآ اِذَا دُكَّتِ الْاَرْضُ دَكًّا دَكًّا ۝٢١

२२) र तेरो पालनकर्ता स्वयं आउने छ र फरिश्ताहरू एक-एक गरी पंक्ति बद्ध भई आउनेछन् ।

وَّجَآءَ رَبُّكَ وَالْمَلَكُ صَفًّا صَفًّا ۝٢٢

२३) र नर्कलाई त्यसदिन उपस्थित गराइनेछ, त्यसदिन मानिसले चेत्नेछ, तर त्यस दिन चेतेबाट केही फाइदा हुने छैन ।

وَجِایْٓءَ يَوْمَئِذٍۭ بِجَهَنَّمَ ۙ يَوْمَئِذٍ يَّتَذَكَّرُ الْاِنْسَانُ وَاَنّٰى لَهُ الذِّكْرٰى ۝٢٣

२४) उसले भन्नेछ, काश मैले आफ्नो (यस) जिन्दगीको निम्ति केही अगाडि पठाएको भए ।

يَقُوْلُ يٰلَيْتَنِيْ قَدَّمْتُ لِحَيَاتِيْ ۝٢٤

२५) अनि त्यसदिन अल्लाहको सजाय जस्तो यातना कसैको हुने छैन ।

فَيَوْمَئِذٍ لَّا يُعَذِّبُ عَذَابَهٗٓ اَحَدٌ ۝٢٥

२६) र कोही छैन जसले उसको जस्तो जकडिएर बाँध्न सकोस् ।

وَّلَا يُوْثِقُ وَثَاقَهٗٓ اَحَدٌ ۝٢٦

२७) र हे सन्तुष्ट आत्मा ।

يٰٓاَيَّتُهَا النَّفْسُ الْمُطْمَئِنَّةُ ۝٢٧

२८) आफ्नो पालनकर्तातिर तिमी यस किसिमले फर्क कि तिमी ऊसित प्रसन्न र ऊ तिमीसित प्रसन्न ।

ارْجِعِيْٓ اِلٰى رَبِّكِ رَاضِيَةً مَّرْضِيَّةً ۝٢٨

२९) अतः मेरा खास दासहरूमा शम्मिलित भइहाल ।

فَادْخُلِيْ فِيْ عِبٰدِيْ ۝٢٩

३०) र प्रवेश गर मेरो स्वर्गमा ।

وَادْخُلِيْ جَنَّتِيْ ۝٣٠

# सूरतुल् बलद-९०



सूरतुल् बलद मक्की हो, यसमा २० आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

لَآ اُقْسِمُ بِهٰذَا الْبَلَدِ ۝١

१) हामीलाई यस नगर (मक्का) को क़सम ।

وَاَنْتَ حِلٌّۢ بِهٰذَا الْبَلَدِ ۝٢

२) र तपाई यसै नगरमा त बस्नु हुन्छ ।

وَوَالِدٍ وَّمَا وَلَدَ ۝٣

३) र मानवीय बाबु र उसको सन्ततिको क़सम ।

لَقَدْ خَلَقْنَا الْاِنْسَانَ فِيْ كَبَدٍ ۝٤

४) निःसन्देह हामीले मानिसलाई धेरै दु:खमा पैदा गरेका छौं ।

اَيَحْسَبُ اَنْ لَّنْ يَّقْدِرَ عَلَيْهِ اَحَدٌ ۝٥

५) के उसले यो ठान्दछ कि उसमाथि कसैको नियन्त्रण छैन ।

يَقُوْلُ اَهْلَكْتُ مَالًا لُّبَدًا ۝٦

६) भन्दछ कि मैले धेरै माल सम्पत्ति खर्च गरिदिएँ ।

اَيَحْسَبُ اَنْ لَّمْ يَرَهٗٓ اَحَدٌ ۝٧

७) के उसलाई यो लाग्दछ कि कसैले उसलाई देखेन ।

اَلَمْ نَجْعَلْ لَّهٗ عَيْنَيْنِ ۝٨

८) के हामीले उसलाई दुईटा आँखा दिएनौं ।

وَلِسَانًا وَّشَفَتَيْنِ ۝٩

९) र जिब्रो र दुईटा ओठ (दिएनौं) ?

وَهَدَيْنٰهُ النَّجْدَيْنِ ۝١٠

१०) र उसलाई दुवै मार्ग पनि देखायौं ।

فَلَا اقْتَحَمَ الْعَقَبَةَ ۝١١

११) त उसले त्यो घाटीमा पस्न सकेन,

وَمَآ اَدْرٰىكَ مَا الْعَقَبَةُ ۝١٢

१२) र तिमीलाई के थाहा कि त्यो घाटी के हो ?

| | |
|---|---|
| १३) (कसैको) गरदनलाई (दासताबाट) मुक्ति दिलाउनु । | فَكُّ رَقَبَةٍ ﴿١٣﴾ |
| १४) वा भोकको दिन खाना खुवाउनु । | أَوْ إِطْعَٰمٌ فِى يَوْمٍ ذِى مَسْغَبَةٍ ﴿١٤﴾ |
| १५) कुनै नातेदार अनाथलाई, | يَتِيمًا ذَا مَقْرَبَةٍ ﴿١٥﴾ |
| १६) वा धूल-धूसरित (फकिर) भिक्षुलाई । | أَوْ مِسْكِينًا ذَا مَتْرَبَةٍ ﴿١٦﴾ |
| १७) अनि ती मानिसहरूमा शम्मिलित हुन सक्थ्यौ जसले ईमान ल्याउँछन् र एक अर्कालाई धैर्य राख्न र दया गर्नको निम्ति शिक्षा दिन्छन् । | ثُمَّ كَانَ مِنَ ٱلَّذِينَ ءَامَنُوا۟ وَتَوَاصَوْا۟ بِٱلصَّبْرِ وَتَوَاصَوْا۟ بِٱلْمَرْحَمَةِ ﴿١٧﴾ |
| १८) यि मानिसहरू नै दायाँ हात वाला हुन् । | أُو۟لَٰٓئِكَ أَصْحَٰبُ ٱلْمَيْمَنَةِ ﴿١٨﴾ |
| १९) र जसले हाम्रा आयतहरूलाई मानेनन् उनीहरू बायाँ हातवाला हुन् । | وَٱلَّذِينَ كَفَرُوا۟ بِـَٔايَٰتِنَا هُمْ أَصْحَٰبُ ٱلْمَشْـَٔمَةِ ﴿١٩﴾ |
| २०) यिनीहरूमाथि नै आगो हुनेछ जो चारैतिरबाट घेरेको हुने छ । | عَلَيْهِمْ نَارٌ مُّؤْصَدَةٌۢ ﴿٢٠﴾ |



## सूरतुश्शम्स-९१




सूरतुश् शम्स मक्की हो, यसमा १५ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالشَّمْسِ وَضُحٰىهَا ۝١

१) सूर्यको क़सम र त्यसको तापको ।

وَالْقَمَرِ اِذَا تَلٰىهَا ۝٢

२) र चन्द्रको क़सम, जब त्यसको पछाडि उदाउँछ ।

وَالنَّهَارِ اِذَا جَلّٰىهَا ۝٣

३) र दिनको क़सम जब सूर्यलाई प्रकट गरिदिन्छ ।

وَالَّيْلِ اِذَا يَغْشٰىهَا ۝٤

४) र रातीको क़सम जब उसलाई लुकाउँछ ।

وَالسَّمَآءِ وَمَا بَنٰىهَا ۝٥

५) आकाश र त्यसलाई बनाउनेको क़सम ।

وَالْاَرْضِ وَمَا طَحٰىهَا ۝٦

६) क़सम छ धरतीको, र त्यसलाई समथर बनाउनेको ।

وَنَفْسٍ وَّمَا سَوّٰىهَا ۝٧

७) क़सम छ इन्द्रियहरूको र तिनलाई दुरुस्त बनाउने (काम) को ।

فَاَلْهَمَهَا فُجُوْرَهَا وَتَقْوٰىهَا ۝٨

८) फेरि समझ दियो उसलाई व्यभिचार र त्यसबाट बाँचेर अलग रहनुको ।

قَدْ اَفْلَحَ مَنْ زَكّٰىهَا ۝٩

९) जसले (उस) इन्द्रियलाई शुद्ध राख्यो, त्यो सफल भयो ।

وَقَدْ خَابَ مَنْ دَسّٰىهَا ۝١٠

१०) र जसले त्यसलाई माटोमा मिलायो, त्यो असफल भयो ।

| | |
|---|---|
| ११) समूदले आफ्नो अटेरीपनको कारणले (संदेष्टालाई) झुठ्लायो । | كَذَّبَتْ ثَمُودُ بِطَغْوٰىهَآ ﴿١١﴾ |
| १२) जब उनीहरूमध्येबाट सबैभन्दा दुर्भाग्यशाली उभियो । | إِذِ انۢبَعَثَ أَشْقٰىهَا ﴿١٢﴾ |
| १३) (तब) अल्लाहका रसूलले उसलाई भने, "सावधान अल्लाहको ऊँटनी र उसले पिउने पालोको रक्षा गर" । | فَقَالَ لَهُمْ رَسُولُ اللّٰهِ نَاقَةَ اللّٰهِ وَسُقْيٰهَا ﴿١٣﴾ |
| १४) तर उनीहरूले आफ्ना पैगम्बरलाई असत्य सम्झेर त्यस ऊँट्नीको कुर्कुच्चाको नसा काटिदिए, तब अल्लाहले उनीहरूका पापको कारणले उनीहरूमाथि बर्बादी पठायो र फेरि सबैलाई नष्ट गरी त्यस बस्तीलाई बराबर गरिदियो । | فَكَذَّبُوهُ فَعَقَرُوهَا فَدَمْدَمَ عَلَيْهِمْ رَبُّهُمْ بِذَنۢبِهِمْ فَسَوّٰىهَا ﴿١٤﴾ |
| १५) उसलाई त्यसको विनाशकारी परिणामको कुनै भय छैन । | وَلَا يَخَافُ عُقْبٰهَا ﴿١٥﴾ |



# सूरतुल् लैल-९२



सूरतुल् लैल मक्की हो, यसमा २१ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

وَالَّيْلِ اِذَا يَغْشٰى ۝١
१) रात्रीको क़सम, जब ढाक्छ ।

وَالنَّهَارِ اِذَا تَجَلّٰى ۝٢
२) र दिनको क़सम, जब कि चम्किन्छ ।

وَمَا خَلَقَ الذَّكَرَ وَالْاُنْثٰٓى ۝٣
३) र त्यस हस्तीको क़सम, जसले पुरुष र स्त्रीको सृष्टि गऱ्यो ।

اِنَّ سَعْيَكُمْ لَشَتّٰى ۝٤
४) नि:संदेह तिम्रो प्रयास भिन्न-भिन्न छ ।

فَاَمَّا مَنْ اَعْطٰى وَاتَّقٰى ۝٥
५) तसर्थ जसले (अल्लाहको मार्गमा धनमाल) दियो र डर मान्यो (आफ्नो पालनकर्ताको) ।

وَصَدَّقَ بِالْحُسْنٰى ۝٦
६) र राम्रो कुराको पुष्टि गर्दै गऱ्यो ।

فَسَنُيَسِّرُهٗ لِلْيُسْرٰى ۝٧
७) त हामीले पनि उसलाई सजिलो बाटोको सुविधा प्रदान गर्नेछौं ।

وَاَمَّا مَنْ بَخِلَ وَاسْتَغْنٰى ۝٨
८) तर जसले कन्जूसी गऱ्यो र जो लापरवाही देखायो ।

وَكَذَّبَ بِالْحُسْنٰى ۝٩
९) र असल कुराको उपहास गऱ्यो ।

فَسَنُيَسِّرُهٗ لِلْعُسْرٰى ۝١٠
१०) त हामीले पनि उसलाई अभाव र कठिनाईका सामग्री प्रदान गर्नेछौं ।

وَمَا يُغْنِيْ عَنْهُ مَالُهٗٓ اِذَا تَرَدّٰى ۝١١
११) त्यसको धनमाल, ऊ खाल्डोमा लड्दा उसको कुनै पनि काम आउने छैन ।

إِنَّ عَلَيْنَا لَلْهُدَىٰ ﴿١٢﴾

१२) निश्चय नै हाम्रो जिम्मा त मार्ग देखाउनु छ ।

وَإِنَّ لَنَا لَلْآخِرَةَ وَالْأُولَىٰ ﴿١٣﴾

१३) र वास्तवमा हाम्रै अधिकारमा छ परलोक र संसार ।

فَأَنذَرْتُكُمْ نَارًا تَلَظَّىٰ ﴿١٤﴾

१४) मैले त तिमीलाई प्रज्वलित आगोबाट सावधान गराइदिएँ ।

لَا يَصْلَاهَا إِلَّا الْأَشْقَى ﴿١٥﴾

१५) जसमा मात्र त्यही पर्नेछ जो साह्रै नै अभागा हुनेछ ।

الَّذِي كَذَّبَ وَتَوَلَّىٰ ﴿١٦﴾

१६) जसले झुठ्लायो र (उसको अनुशरणबाट) मुख फर्कायो ।

وَسَيُجَنَّبُهَا الْأَتْقَى ﴿١٧﴾

१७) र जो बडो संयमी हुनेछ, त्यसलाई त्यसबाट टाडा राखिनेछ ।

الَّذِي يُؤْتِي مَالَهُ يَتَزَكَّىٰ ﴿١٨﴾

१८) जसले आफ्नो सम्पत्ति दिएर आफूलाई शुद्ध बनाउँदछ ।

وَمَا لِأَحَدٍ عِندَهُ مِن نِّعْمَةٍ تُجْزَىٰ ﴿١٩﴾

१९) र (यसकारण) दिंदैन कि उसमाथि कसैको उपकार छ। जसको सट्टामा कुनै किसिमको बदलाको आशा गरिएको हुन्छ ।

إِلَّا ابْتِغَاءَ وَجْهِ رَبِّهِ الْأَعْلَىٰ ﴿٢٠﴾

२०) बरु मात्र उसको आफ्नो महान पालनकर्ताको अनुहारको (दर्शनका) लागि (अर्थात रबको प्रसन्नता पाउनको लागि) ।

وَلَسَوْفَ يَرْضَىٰ ﴿٢١﴾

२१) नि:संदेह त्यो (अल्लाह) शीघ्र नै राजी भैहाल्नेछ ।

## सूरतुज् जुहा-९३



सूरतुज् जुहा मक्की हो, यसमा ११ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) सूर्यको माथी भइहालने समय (चाश्त) को सौगन्ध ।

وَالضُّحٰى ①

२) र क़सम छ, रात्री को जब छाउँछ ।

وَالَّيْلِ اِذَا سَجٰى ②

३) तिम्रो पालनकर्ताले न त तिमीलाई छाडेको छ र न उदासीन भएको छ ।

مَا وَدَّعَكَ رَبُّكَ وَمَا قَلٰى ③

४) निश्चित रूपले तिम्रो निम्ति पहिलो भन्दा परिणाम राम्रो हुनेछ ।

وَلَلْاٰخِرَةُ خَيْرٌ لَّكَ مِنَ الْاُوْلٰى ④

५) तिम्रो पालनकर्ताले शीघ्र नै तिमीलाई (पुरस्कार) प्रदान गर्ने छ त तिमी प्रसन्न भइहाल्नेछौ ।

وَلَسَوْفَ يُعْطِيْكَ رَبُّكَ فَتَرْضٰى ⑤

६) के उसले तिमीलाई अनाथ पाएर शरण दिएन ?

اَلَمْ يَجِدْكَ يَتِيْمًا فَاٰوٰى ⑥

७) र तिमीलाई मार्ग विचलित देखेर सही बाटो देखाएन ।

وَوَجَدَكَ ضَآلًّا فَهَدٰى ⑦

८) र तिमीलाई कमजोर पाएर बलियो बनाएन ।

وَوَجَدَكَ عَآئِلًا فَاَغْنٰى ⑧

९) तसर्थ तिमीले पनि अनाथ माथि अत्याचार नगर्नु ।

فَاَمَّا الْيَتِيْمَ فَلَا تَقْهَرْ ⑨

१०) र माँग्नेवालालाई हप्काउने नगर्नु ।

وَاَمَّا السَّآئِلَ فَلَا تَنْهَرْ ⑩

११) र आफ्ना पालनकर्ताको अनुकम्पालाई वर्णन गर्दैगर्नु ।

وَاَمَّا بِنِعْمَةِ رَبِّكَ فَحَدِّثْ ⑪

# सूरतुश्शरह-९४



सूरतुश्शरह मक्की हो, यसमा ८ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اَلَمْ نَشْرَحْ لَكَ صَدْرَكَ ۙ﴿۱﴾

१) के हामीले तिम्रो छाती खोलिदिएनौं ?

وَوَضَعْنَا عَنْكَ وِزْرَكَ ۙ﴿۲﴾

२) र तिमी माथिबाट तिम्रो बोझ पनि हामीले उतारिदियौं ।

الَّذِيْٓ اَنْقَضَ ظَهْرَكَ ۙ﴿۳﴾

३) जसले तिम्रो कम्मर भाँचिराखेको थियो ।

وَرَفَعْنَا لَكَ ذِكْرَكَ ۭ﴿۴﴾

४) र हामीले तिम्रो मर्यादा उच्च पार्‍यौं ।

فَاِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۙ﴿۵﴾

५) निःसन्देह कठिनाइका साथमा सरलता पनि छ ।

اِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۭ﴿۶﴾

६) बेशक कष्टको साथ सजिलो छ ।

فَاِذَا فَرَغْتَ فَانْصَبْ ۙ﴿۷﴾

७) जब तिमीलाई फुर्सद हुन्छ, तब इबादतमा परिश्रम गर,

وَاِلٰى رَبِّكَ فَارْغَبْ ﴿۸﴾

८) र आफ्नो पालनकर्तातिरै प्रवृत्त भइहाल्ने गर ।



## सूरतुत्तीन-९५




सूरतुत्तीन मक्की हो, यसमा ८ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) इंजीरको क़सम र जैतूनको ।

وَالتِّيْنِ وَالزَّيْتُوْنِ ﴿١﴾

२) र तूरे सीनीनको ।

وَطُوْرِ سِيْنِيْنَ ﴿٢﴾

३) र यस शान्तिपूर्ण शहरको (मक्काको) क़सम ।

وَهٰذَا الْبَلَدِ الْاَمِيْنِ ﴿٣﴾

४) हामीले निःसन्देह मनुष्यलाई सर्वोत्तम आकारमा बनायौं ।

لَقَدْ خَلَقْنَا الْاِنْسَانَ فِيْٓ اَحْسَنِ تَقْوِيْمٍ ﴿٤﴾

५) फेरि निकृष्टतम दशातिर फर्कायौं ।

ثُمَّ رَدَدْنٰهُ اَسْفَلَ سٰفِلِيْنَ ﴿٥﴾

६) तर ती मानिसहरू जसले ईमान ल्याए र जसले असल कर्म गरे, उनीहरूको लागि कहिल्यै समाप्त नहुने प्रतिफल छ ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَلَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ﴿٦﴾

७) अनि (हे आदमको सन्तति !) तिमीले प्रतिफलको दिनलाई असत्य ठहऱ्याउँन, कुन कुराले उत्प्रेरित गर्दछ ।

فَمَا يُكَذِّبُكَ بَعْدُ بِالدِّيْنِ ﴿٧﴾

८) के अल्लाह सबै हाकिमहरूभन्दा ठूलो हाकिम होइन ?

اَلَيْسَ اللّٰهُ بِاَحْكَمِ الْحٰكِمِيْنَ ﴿٨﴾

## सूरतुल् अ़लक़्-९६




सूरतुल् अ़लक़् मक्की हो, यसमा १९ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اِقْرَاْ بِاسْمِ رَبِّكَ الَّذِيْ خَلَقَ ①

१) आफ्नो पालनकर्ताको नाम लिएर पढ, जसले सृष्टि गऱ्यो ।

خَلَقَ الْاِنْسَانَ مِنْ عَلَقٍ ②

२) जसले मानिसलाई रगतको थोपाबाट बनायो ।

اِقْرَاْ وَرَبُّكَ الْاَكْرَمُ ③

३) तिमी पढ्दै गर तिम्रो पालनकर्ता बडो दयावान छ ।

الَّذِيْ عَلَّمَ بِالْقَلَمِ ④

४) जसले कलमको माध्यमबाट शिक्षा प्रदान गऱ्यो ।

عَلَّمَ الْاِنْسَانَ مَا لَمْ يَعْلَمْ ⑤

५) जसले मानिसलाई त्यो ज्ञान प्रदान गऱ्यो, जुन उसले जान्दैनथ्यो ।

كَلَّآ اِنَّ الْاِنْسَانَ لَيَطْغٰٓى ⑥

६) तर मानिस उल्लंघनकारी भइहाल्दछ ।

اَنْ رَّاٰهُ اسْتَغْنٰى ⑦

७) यसकारण कि उसले आफूलाई आत्मनिर्भर देख्दछ ।

اِنَّ اِلٰى رَبِّكَ الرُّجْعٰى ⑧

८) यसमा कुनै सन्देह छैन कि तिम्रो पालनकर्तातिर नै फर्किजानु पर्नेछ ।

اَرَءَيْتَ الَّذِيْ يَنْهٰى ⑨

९) के तिमीले त्यस व्यक्तिलाई देख्यौ ? जसले (अल्लाहको) सेवकलाई मनाही गर्दछ ।

عَبْدًا اِذَا صَلّٰى ⑩

१०) (अर्थात्) एक अल्लाहको भक्तलाई जबकी उसले नमाज पढ्न थाल्छ ।

أَرَءَيْتَ إِن كَانَ عَلَى ٱلْهُدَىٰٓ ﴿١١﴾

११) तिम्रो के विचार छ ? यदि त्यो सोझो मार्गमा छ भने ।

أَوْ أَمَرَ بِٱلتَّقْوَىٰٓ ﴿١٢﴾

१२) वा संयमित रहनुको आदेश दिन्छ भने ।

أَرَءَيْتَ إِن كَذَّبَ وَتَوَلَّىٰٓ ﴿١٣﴾

१३) अच्छा हेर त यदि त्यस (रोक्नेवाला)ले झूठ ठान्यो र मुख फर्काएको भए त,

أَلَمْ يَعْلَم بِأَنَّ ٱللَّهَ يَرَىٰ ﴿١٤﴾

१४) के उसले जानेन कि अल्लाहले राम्ररी उसलाई देखिरहेकोछ ।

كَلَّا لَئِن لَّمْ يَنتَهِ لَنَسْفَعًۢا بِٱلنَّاصِيَةِ ﴿١٥﴾

१५) निःसंदेह यदि त्यसले मानेन भने हामीले उसलाई उसको टाउकोको (निधारको) कपाल समातेर घिसार्नेछौं ।

نَاصِيَةٍ كَٰذِبَةٍ خَاطِئَةٍ ﴿١٦﴾

१६) यस्तो टाउको जो झूठो अपराधी छ ।

فَلْيَدْعُ نَادِيَهُۥ ﴿١٧﴾

१७) यिनीहरू आफ्ना साथीहरूको परिषद्लाई बोलाऊन् ।

سَنَدْعُ ٱلزَّبَانِيَةَ ﴿١٨﴾

१८) हामीले पनि आफ्नो सजायका दूतहरूलाई बोलाउनेछौं ।

كَلَّا لَا تُطِعْهُ وَٱسْجُدْ وَٱقْتَرِب ۩ ﴿١٩﴾

१९) खबरदार ! उसको भनाई कदापि नमान्नु र सजदा गर्नु र (अल्लाहको) निकटता प्राप्त गर्दैरहुन् ।



# सूरतुल् क़द्र-९७




सूरतुल् क़द्र मक्की हो, यसमा ५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

१) हामीले यस (कुरआन) लाई क़द्रको रातमा अवतरित गर्‍यौं ।

إِنَّآ أَنزَلۡنَٰهُ فِي لَيۡلَةِ ٱلۡقَدۡرِ ١

२) र तिमीलाई के थाहा कि शबे क़द्र (गौरवको रात्री) के हो ?

وَمَآ أَدۡرَىٰكَ مَا لَيۡلَةُ ٱلۡقَدۡرِ ٢

३) शबे क़द्र एक हजार महीनाभन्दा राम्रो छ ।

لَيۡلَةُ ٱلۡقَدۡرِ خَيۡرٞ مِّنۡ أَلۡفِ شَهۡرٖ ٣

४) यसमा रूहुल अमीन (जिब्राइल) र फरिश्ताहरू प्रत्येक काम सम्पन्न गर्नको लागि, आफ्नो पालनकर्ताको आदेशबाट अवतरित हुन्छन् ।

تَنَزَّلُ ٱلۡمَلَٰٓئِكَةُ وَٱلرُّوحُ فِيهَا بِإِذۡنِ رَبِّهِم مِّن كُلِّ أَمۡرٖ ٤

५) यो रात पूर्णतया शान्ति र भलाईको हो, उषाकालको उदय हुनेसम्म ।

سَلَٰمٌ هِيَ حَتَّىٰ مَطۡلَعِ ٱلۡفَجۡرِ ٥



# सूरतुल् बैयिनः -९८



सूरतुल् बैयिनह मक्की हो, यसमा ८ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

لَمْ يَكُنِ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَالْمُشْرِكِيْنَ مُنْفَكِّيْنَ حَتّٰى تَاْتِيَهُمُ الْبَيِّنَةُ ۝١

१) अहले किताब र मुश्रिकहरू कुफ्रबाट अलग हुनेवाला छैनन् जबसम्मकि उनको पासमा स्पष्ट प्रमाण आउँदैन ।

رَسُوْلٌ مِّنَ اللّٰهِ يَتْلُوْا صُحُفًا مُّطَهَّرَةً ۝٢

२) अल्लाहको तर्फबाट एउटा रसूल जो पवित्र पृष्ठहरूलाई पढोस ।

فِيْهَا كُتُبٌ قَيِّمَةٌ ۝٣

३) जसमा असल र ठीक आदेशहरू अंकित छन् ।

وَمَا تَفَرَّقَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنَةُ ۝٤

४) र किताबवालाहरू आफ् समक्ष स्पष्ट प्रमाण आइसकेपछि विभाजित भएका छन् ।

وَمَآ اُمِرُوْٓا اِلَّا لِيَعْبُدُوا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۙ حُنَفَآءَ وَيُقِيْمُوا الصَّلٰوةَ وَيُؤْتُوا الزَّكٰوةَ وَذٰلِكَ دِيْنُ الْقَيِّمَةِ ۝٥

५) उनीहरूलाई यही मात्र आदेश दिइएको थियो कि निष्ठापूर्वक अल्लाहको उपासना गरुन् र एकाग्र भएर उसैको लागि धर्मलाई शुद्ध राखुन । र निष्ठाका साथ नमाज़ पढुन् र ज़कात देऊन् र यही नै सबैको साँचो धर्म हो ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَالْمُشْرِكِيْنَ فِيْ نَارِ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ۗ اُولٰٓئِكَ هُمْ شَرُّ الْبَرِيَّةِ ۝٦

६) किताबवालाहरू मध्येबाट जो काफिर छन् र मुश्रिकहरू सबै नर्कको आगोमा (पर्नेछन् र) तिनीहरू सधैं त्यसमा रहनेछन् ।

यी मानिसहरू सबै प्राणीभन्दा नराम्रा हुन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ أُولَٰئِكَ هُمْ خَيْرُ الْبَرِيَّةِ ﴿٧﴾

७) र जसले ईमान ल्याए र असल कर्म गरिरहे, तिनीहरू सम्पूर्ण प्राणीहरूमा राम्रा हुन् ।

جَزَاؤُهُمْ عِنْدَ رَبِّهِمْ جَنَّاتُ عَدْنٍ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ رَضِيَ اللَّهُ عَنْهُمْ وَرَضُوا عَنْهُ ۚ ذَٰلِكَ لِمَنْ خَشِيَ رَبَّهُ ﴿٨﴾

८) उनीहरूको बदला उनीहरूको पालनकर्ता कहाँ सधैं बास गर्ने बगैंचाहरू हुन्, जसमुनि नहरहरू बगिराखेका हुने छन् । सधैं सधैं तिनीहरूमा रहनेछन् । अल्लाह उनीहरूसित खुशी भयो र उनीहरू उससित खुशी भए, यो प्रतिफल उसको निम्ति हो, जो आफ्नो पालनकर्तासित डर मान्छ ।



# सूरतुज् ज़ल्ज़ल: -९९




सूरतुज् ज़ल्ज़ल: मदनी हो, यसमा ८ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

१) जब धरती पूर्ण रूपले (भूकम्पबाट) प्रकम्पित गराइहालिनेछ ।

إِذَا زُلْزِلَتِ الْأَرْضُ زِلْزَالَهَا ﴿١﴾

२) र पृथ्वीले आफ्नो (भित्रको) बोझ बाहिर निकालिदिनेछ ।

وَأَخْرَجَتِ الْأَرْضُ أَثْقَالَهَا ﴿٢﴾

३) मानिसले भन्न थाल्छ कि यसलाई के भएको छ ?

وَقَالَ الْإِنسَانُ مَا لَهَا ﴿٣﴾

४) त्यसदिन पृथ्वीले आफ्नो सबै कुराहरू वर्णन गर्नेछ ।

يَوْمَئِذٍ تُحَدِّثُ أَخْبَارَهَا ﴿٤﴾

५) यसकारण कि तिम्रो पालनकर्ताले उसलाई आदेश पठाएको हुनेछ ।

بِأَنَّ رَبَّكَ أَوْحَىٰ لَهَا ﴿٥﴾

६) त्यसदिन मानिसहरू समूह-समूह गरी फिर्ता आउनेछन् ताकि उनीलाई उनको कर्म पत्री देखाइदिइयोस् ।

يَوْمَئِذٍ يَصْدُرُ النَّاسُ أَشْتَاتًا لِّيُرَوْا أَعْمَالَهُمْ ﴿٦﴾

७) अत: जसले अलिकति पनि नेकी(पुण्य) गरेको हुनेछ, उसले त्यसलाई देखिहाल्नेछ ।

فَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ خَيْرًا يَرَهُ ﴿٧﴾

८) र जसले अलिकति पनि नराम्रो काम गरेको हुनेछ, उसले त्यसलाई देखिहाल्नेछ ।

وَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ شَرًّا يَرَهُ ﴿٨﴾

# सूरतुल् आदियात-१००



सूरतुल् आदियात मक्की हो, यसमा ११ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

وَالْعٰدِيٰتِ ضَبْحًا ①

१) ती घोडाहरूको कसम जो तीव्र गतिले हाफ्दै दगुर्छन् ।

فَالْمُوْرِيٰتِ قَدْحًا ②

२) अनि ढुङ्गामा नालको ठक्करबाट झिल्काहरू निकाल्नेवालाहरूको कसम ।

فَالْمُغِيْرٰتِ صُبْحًا ③

३) अनि प्रातः को समय धावा बोल्नेहरूको क़सम ।

فَاَثَرْنَ بِهٖ نَقْعًا ④

४) अनि जो त्यस समयमा धूलकणहरू उडाउँदछन् ।

فَوَسَطْنَ بِهٖ جَمْعًا ⑤

५) अनि त्यसबखत सेनाहरू भित्र पसी दिन्छन् ।

اِنَّ الْاِنْسَانَ لِرَبِّهٖ لَكَنُوْدٌ ⑥

६) निःसन्देह मानिस आफ्नो पालनकर्ताको बडो अकृतज्ञ छ ।

وَاِنَّهٗ عَلٰى ذٰلِكَ لَشَهِيْدٌ ⑦

७) र निश्चय नै ऊ स्वयम् पनि यस ऊपर साक्षी छ ।

وَاِنَّهٗ لِحُبِّ الْخَيْرِ لَشَدِيْدٌ ⑧

८) त्यो धनको मोहमा बडो दृढ छ ।

اَفَلَا يَعْلَمُ اِذَا بُعْثِرَ مَا فِى الْقُبُوْرِ ⑨

९) के त्यसले त्यस समयलाई जान्दैन जब चिहानमा जे छन्, उनीहरू बाहिर निकालिनेछन् ।

وَحُصِّلَ مَا فِى الصُّدُوْرِ ⑩

१०) र जुन (रहस्य) हृदयहरूमा छन्, ती प्रकट गरिनेछन् ।

إِنَّ رَبَّهُم بِهِمْ يَوْمَئِذٍ لَّخَبِيرٌ ﴿١١﴾

११) निःसन्देह उनको पालनकर्ताले त्यसदिन उनको अवस्था सँग राम्ररी परिचित हुनेछ ।



# सूरतुल् क़ारिअः -१०१




सूरतुल् क़ारिअः मक्की हो, यसमा ११ आयतहरू छन् ।

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

| | |
|---|---|
| १) (त्यो) खडखडाउने चर्को स्वर गर्नेवाला । | الْقَارِعَةُ ① |
| २) खडखडाउने के हो ? | مَا الْقَارِعَةُ ② |
| ३) र तिमीलाई के थाहा कि त्यो खडखडाई दिने के हो ? | وَمَا أَدْرَاكَ مَا الْقَارِعَةُ ③ |
| ४) जुन दिन मानिसहरू यस्ता हुन्छन् जस्तो कि छरिएका भुसुनाहरू । | يَوْمَ يَكُونُ النَّاسُ كَالْفَرَاشِ الْمَبْثُوثِ ④ |
| ५) र पहाडहरू धुनिएका रङ्ग विरङ्गका ऊन, जस्ता हुने छन् । | وَتَكُونُ الْجِبَالُ كَالْعِهْنِ الْمَنفُوشِ ⑤ |
| ६) फेरि जसका (कर्महरूको) वज़न गरुङ्गो हुनेछ, | فَأَمَّا مَن ثَقُلَتْ مَوَازِينُهُ ⑥ |
| ७) ऊ त इच्छित आरामको जिन्दगीमा हुनेछन् । | فَهُوَ فِي عِيشَةٍ رَّاضِيَةٍ ⑦ |
| ८) र जसका वज़न हलका हुनेछन्, | وَأَمَّا مَنْ خَفَّتْ مَوَازِينُهُ ⑧ |
| ९) उनीहरूको फर्केर जाने ठाउँ "हाविया" (गहिरो खाल्डो) हो । | فَأُمُّهُ هَاوِيَةٌ ⑨ |
| १०) र तिमीलाई के थाहा कि "हाविया" के हो ? | وَمَا أَدْرَاكَ مَا هِيَهْ ⑩ |
| ११) (त्यो) प्रज्वलित आगो हो । | نَارٌ حَامِيَةٌ ⑪ |

# सूरतुत् तकासुर-१०२




सूरतुत् तकासुर मक्की हो, यसमा ८ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तिमीलाई धेरैको (सम्पत्तिको) इच्छाले असावधान गरिदिएको छ ।

اَلْهٰىكُمُ التَّكَاثُرُ ﴿١﴾

२) यहाँसम्मकि तिमी कब्रस्तान पुगिहाल्यौ ।

حَتّٰى زُرْتُمُ الْمَقَابِرَ ﴿٢﴾

३) होइन, तिमीलाई अत्यन्त छिटै थाहा भइहाल्नेछ ।

كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٣﴾

४) फेरि केही छैन, तिमीलाई शीघ्र नै थाहा भइहाल्छ ।

ثُمَّ كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٤﴾

५) होइन तिमी यकीनको साथ थाहा पाउँछौ ।

كَلَّا لَوْ تَعْلَمُوْنَ عِلْمَ الْيَقِيْنِ ﴿٥﴾

६) त तिमीले अवश्य नै नर्क देख्नेछौ ।

لَتَرَوُنَّ الْجَحِيْمَ ﴿٦﴾

७) अनि तिमीले यसलाई विश्वासको आँखाले देख्ने छौ ।

ثُمَّ لَتَرَوُنَّهَا عَيْنَ الْيَقِيْنِ ﴿٧﴾

८) अनि निश्चय नै त्यस दिन तिमीसित (अल्लाहका) अनुकम्पहरूको बारेमा सोधपूछ हुनेछ ।

ثُمَّ لَتُسْـَٔلُنَّ يَوْمَئِذٍ عَنِ النَّعِيْمِ ﴿٨﴾



## सूरतुल् अस्र-१०३




सूरतुल् अस्र मक्की हो, यसमा ३ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) समय (युग) को क़सम।

وَالْعَصْرِ ①

२) वास्तवमा मानिसहरू पूरै घाटामा छन् ।

اِنَّ الْاِنْسَانَ لَفِيْ خُسْرٍ ②

३) ती मानिसहरू बाहेक, जसले ईमान ल्याए र असल कर्म गरिरहे र (जसले) आपसमा सत्य कुराको आग्रह र एक अर्कालाई धैर्यको ताकेदा गरिरहे ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَتَوَاصَوْا بِالْحَقِّ ۙ۬ وَتَوَاصَوْا بِالصَّبْرِ ③



## सूरतुल् हुमज़ः -१०४




सूरतुल् हुमज़ः, मक्की हो, यसमा ९ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) बर्बादी छ, त्यस्तो प्रत्येक मानिसको जो अर्काको अवगुण खोज्ने गर्दछ र चुकुली गरी रहन्छ ।

وَيْلٌ لِّكُلِّ هُمَزَةٍ لُّمَزَةِ ۙ ١

२) जसले मालसम्पत्ति थुपार्दै जान्छ र त्यसलाई गन्दै राख्छ ।

الَّذِيْ جَمَعَ مَالًا وَّعَدَّدَهٗ ۙ ٢

३) उसले ठान्छ कि उसको सम्पत्ति उससँग सधैं रहनेछ ।

يَحْسَبُ اَنَّ مَالَهٗٓ اَخْلَدَهٗ ۚ ٣

४) कदापि होइन, यो त अवश्य टुक्रा-टुक्रा पारिदिने आगोमा फ्याँकिनेछ ।

كَلَّا لَيُنْۢبَذَنَّ فِي الْحُطَمَةِ ۖ ٤

५) र तिमीलाई के थाह कि यस्तो (आगो) हुत्मा के हो ?

وَمَآ اَدْرٰىكَ مَا الْحُطَمَةُ ۗ ٥

६) त्यो अल्लाहद्वारा प्रज्वलित आगो हो ।

نَارُ اللّٰهِ الْمُوْقَدَةُ ۙ ٦

७) जो छातीमाथि चढ्दै जानेछ ।

الَّتِيْ تَطَّلِعُ عَلَى الْاَفْـِٕدَةِ ۗ ٧

८) र (त्यो आगो) उनीमाथि,सबै दिशाबाट बन्द हुन्छ ।

اِنَّهَا عَلَيْهِمْ مُّؤْصَدَةٌ ۙ ٨

९) ठूलाठूला स्तम्भहरूमा ।

فِيْ عَمَدٍ مُّمَدَّدَةٍ ٩

# सूरतुल् फील-१०५




सूरतुल् फ़ील मक्की हो, यसमा ५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) के तिमीले देखेनौ कि तिम्रो पालनकर्ताले हातीवालाहरूसँग के गर्‍यो ?

أَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِأَصْحَابِ الْفِيلِ ①

२) के उसले उनीहरूको दुष्चक्रलाई व्यर्थ बनाइदिएन ?

أَلَمْ يَجْعَلْ كَيْدَهُمْ فِي تَضْلِيلٍ ②

३) र उनीहरूमाथि समूहका समूह पंक्षीहरू पठाइदियो ।

وَأَرْسَلَ عَلَيْهِمْ طَيْرًا أَبَابِيلَ ③

४) जो उनीहरूलाई माटो र पत्थरको डल्लाले हानी रहेका थिए ।

تَرْمِيهِمْ بِحِجَارَةٍ مِّنْ سِجِّيلٍ ④

५) जसले उनीहरूलाई चपाइको भुस जस्तो बनाइदिए ।

فَجَعَلَهُمْ كَعَصْفٍ مَّأْكُولٍ ⑤



# सूरतु कुरैश-१०६




सूरतु कुरैश मक्की हो, यसमा ४ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

لِاِيْلٰفِ قُرَيْشٍ ﴿١﴾

१) कुरैशलाई परिचित गर्नुका लागि ।

اٖلٰفِهِمْ رِحْلَةَ الشِّتَآءِ وَالصَّيْفِ ﴿٢﴾

२) उनीहरूलाई जाडो र गर्मीको समयमा यात्रा सँग परिचित गराउनका लागि ।

فَلْيَعْبُدُوْا رَبَّ هٰذَا الْبَيْتِ ﴿٣﴾

३) अतः उनीहरूलाई आवश्यक छ कि यसै घरको रबको पूजा गरुन् ।

الَّذِيْٓ اَطْعَمَهُمْ مِّنْ جُوْعٍ ۙ وَّاٰمَنَهُمْ مِّنْ خَوْفٍ ﴿٤﴾

४) अतः जसले उनीहरूलाई भोकमा खाना खुवायो र डर र भयबाट अमन चैन प्रदान गर्‍यो ।



# सूरतुल् माऊन-१०७




सूरतुल् माऊन मक्की हो, यसमा ७ आयतहरू छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

أَرَءَيْتَ الَّذِي يُكَذِّبُ بِالدِّينِ ①

१) तिमीले त्यसलाई देख्यौ, जसले प्रतिफल (को दिनलाई) झूठा ठहराउँदछ ।

فَذَٰلِكَ الَّذِي يَدُعُّ الْيَتِيمَ ②

२) उही त हो जसले अनाथहरूलाई धक्का दिन्छ ।

وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ③

३) र निमुखाहरूलाई ख्वाउने कुरामा प्रोत्साहित गर्दैन ।

فَوَيْلٌ لِّلْمُصَلِّينَ ④

४) अतः अफशोच छ ती नमाज़ीहरूलाई (र वैल नामक नर्कको ठाउँ) छ ।

الَّذِينَ هُمْ عَن صَلَاتِهِمْ سَاهُونَ ⑤

५) जो आफ्नो नमाज़ प्रति असावधान छन् ।

الَّذِينَ هُمْ يُرَاءُونَ ⑥

६) जसले आडम्बरका काम गर्दछन् ।

وَيَمْنَعُونَ الْمَاعُونَ ⑦

७) र गर्नु पर्ने कुराहरूबाट रोक्छन् ।



# सूरतुल् कौसर-१०८




सूरतुल् कौसर मक्की हो, यसमा ३ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

१) निःसन्देह हामीले तिमीलाई "हौजे कौसर" (अनुकम्पाहरू) प्रदान गरेका छौं ।

إِنَّآ أَعۡطَيۡنَٰكَ ٱلۡكَوۡثَرَ ١

२) अतः आफ्ना पालनकर्ताको लागि नमाज़ पढ्ने गर र उसको निम्ति कुर्बानी गर ।

فَصَلِّ لِرَبِّكَ وَٱنۡحَرۡ ٢

३) निःसन्देह तिम्रो शत्रु नै लावारिस नाम-निशान बेगरको हुनेछ ।

إِنَّ شَانِئَكَ هُوَ ٱلۡأَبۡتَرُ ٣



# सूरतुल् काफिरून-१०९




सूरतुल् काफ़िरून मक्की हो, यसमा ६ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

قُلْ يٰٓاَيُّهَا الْكٰفِرُوْنَ ①

१) (हे मोहम्मद स. अ.!) भनिदिनुस् कि हे काफिरहरू ! ।

لَآ اَعْبُدُ مَا تَعْبُدُوْنَ ②

२) जुनलाई तिमीले पूज्दछौ, उनीहरूको म पूजा गर्दिनं ।

وَلَآ اَنْتُمْ عٰبِدُوْنَ مَآ اَعْبُدُ ③

३) र जसको उपासना म गर्दछु, उसको तिमीले उपासना गर्दैनौ ।

وَلَآ اَنَا عَابِدٌ مَّا عَبَدْتُّمْ ④

४) र जसलाई तिमीले पूज्दछौ, तिनीहरुको म पूजा गर्नेवाला छैन।

وَلَآ اَنْتُمْ عٰبِدُوْنَ مَآ اَعْبُدُ ⑤

५) र न तिमी उसको उपासना गर्नेवाला छौ, जसको कि म उपासना गर्दछु ।

لَكُمْ دِيْنُكُمْ وَلِيَ دِيْنِ ⑥

६) तिम्रो निम्ति तिम्रो धर्म छ र मेरो निम्ति मेरो धर्म ।



## सूरतुन् नस्र-११०




सूरतुन् नस्र मदनी हो, यसमा ३ आयतहरु छन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِذَا جَآءَ نَصۡرُ ٱللَّهِ وَٱلۡفَتۡحُ ١

१) जब अल्लाहको सहायता र विजय प्राप्त भइहालोस् ।

وَرَأَيۡتَ ٱلنَّاسَ يَدۡخُلُونَ فِي دِينِ ٱللَّهِ أَفۡوَاجٗا ٢

२) र तिमीले मानिसहरुको समूहमाथि समूह अल्लाहको दीन (धर्म) मा प्रवेश गरिराखेको देखी हाल्छौ ।

فَسَبِّحۡ بِحَمۡدِ رَبِّكَ وَٱسۡتَغۡفِرۡهُۚ إِنَّهُۥ كَانَ تَوَّابَۢا ٣

३) तब आफ्नो पालनकर्ताको प्रशंसाका साथ गुणगान गर र ऊ सित क्षमायाचना गर । निश्चय नै ऊ क्षमायाचना स्वीकार गर्नेवाला छ ।



## सूरतु तब्बत्-१११




सूरतु तब्बत् मक्की हो, यसमा ५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

१) अबू लहबका दुवैहात भाँचिए र त्यो स्वयम् पनि नष्ट भइहाल्यो ।

تَبَّتۡ يَدَآ أَبِي لَهَبٖ وَتَبَّ ①

२) नत उसको सम्पत्ति उसको काम आयो र न उसको कमाई ।

مَآ أَغۡنَىٰ عَنۡهُ مَالُهُۥ وَمَا كَسَبَ ②

३) ऊ शीघ्र नै प्रज्वलित आगोमा पर्नेछ ।

سَيَصۡلَىٰ نَارٗا ذَاتَ لَهَبٖ ③

४) र उसकी स्त्री पनि जानेछे जुन दाउरा बोक्नेवाली छे ।

وَٱمۡرَأَتُهُۥ حَمَّالَةَ ٱلۡحَطَبِ ④

५) उसको घाँटीमा खजूरबाट बनाइएको डोरी हुनेछ ।

فِي جِيدِهَا حَبۡلٞ مِّن مَّسَدِۭ ⑤



# सूरतुल् इख़लास-११२




सूरतुल् इख़लास मक्की हो, यसमा ४ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तपाई भनिदिनुस् कि त्यो अल्लाह एक छ ।

قُلْ هُوَ اللّٰهُ اَحَدٌ ۚ ﴿١﴾

२) अल्लाह निरपेक्ष छ ।

اَللّٰهُ الصَّمَدُ ۚ ﴿٢﴾

३) नत उसबाट कोही जन्मेको छ, न ऊ कसैबाट जन्मेको छ ।

لَمْ يَلِدْ ۙ وَلَمْ يُوْلَدْ ۙ ﴿٣﴾

४) र न कोही उसको समकक्ष छ ।

وَلَمْ يَكُنْ لَّهٗ كُفُوًا اَحَدٌ ۚ ﴿٤﴾



# सूरतुल् फलक्-११३



सूरतुल् फलक् मक्की हो, यसमा ५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तपाई भन्नुस् कि म प्रातः को स्वामीको शरण माग्दछु ।

قُلْ أَعُوْذُ بِرَبِّ الْفَلَقِ ﴿١﴾

२) हरेक कुरोको नराम्रो कार्यबाट, जुन उसले सृष्टि गरेको छ ।

مِنْ شَرِّ مَا خَلَقَ ﴿٢﴾

३) र अँध्यारो रातिको अन्धकारबाट, जबकि त्यसको अँध्यारोले ढाँकिहाल्छ ।

وَمِنْ شَرِّ غَاسِقٍ إِذَا وَقَبَ ﴿٣﴾

४) र गाँठोमा फूँक मार्नेहरू (जादू) को नराम्रो कार्यबाट ।

وَمِنْ شَرِّ النَّفّٰثٰتِ فِي الْعُقَدِ ﴿٤﴾

५) र ईर्ष्यालुको नराम्रो कार्यबाट पनि जबकि त्यसले ईर्ष्या गर्दछ ।

وَمِنْ شَرِّ حَاسِدٍ إِذَا حَسَدَ ﴿٥﴾



## सूरतुन् नास-११४




सूरतुन् नास मक्की हो, यसमा ६ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तपाई भनिदिनुस् कि म मानिसहरूको पालनकर्ताको शरण माँग्दछु ।

قُلْ اَعُوْذُ بِرَبِّ النَّاسِ ﴿١﴾

२) मानिसहरूको स्वामीको ।

مَلِكِ النَّاسِ ﴿٢﴾

३) र मानिसहरूको उपास्यको (शरण) ।

اِلٰهِ النَّاسِ ﴿٣﴾

४) खराब विचार हाल्ने र (उक्साएर) पछि हटी जानेबाट ।

مِنْ شَرِّ الْوَسْوَاسِ ۙ الْخَنَّاسِ ﴿٤﴾

५) जसले मानिसहरूका हृदयमा नराम्रो कर्मको संच्कार हाल्दछ ।

الَّذِىْ يُوَسْوِسُ فِىْ صُدُوْرِ النَّاسِ ﴿٥﴾

६) त्यो चाहे जिन्नहरूमध्येबाट होस् वा मानिसहरूमध्येबाट ।

مِنَ الْجِنَّةِ وَالنَّاسِ ﴿٦﴾



# فهرس بأسماء السور وبيان المكي والمدني منها

## सूर:हरूको नामको सूची र त्यस मध्ये मक्की र मदनीको वर्णन



| क्र.सं. | सूर: | पृष्ठ | | السورة |
|---|---|---|---|---|
| १ | सूरतुल् फातिहा | १ | मक्की | سورة الفاتحة |
| २ | सूरतुल् बकर: | २ | मदनी | سورة البقرة |
| ३ | सूरतु आले इम्रान | ८७ | मदनी | سورة آل عمران |
| ४ | सूरतुन् निसा | १३८ | मदनी | سورة النساء |
| ५ | सूरतुल् माइदा | १९१ | मदनी | سورة المائدة |
| ६ | सूरतुल् अनआम | २३१ | मक्की | سورة الأنعام |
| ७ | सूरतुल् आराफ | २७८ | मक्की | سورة الأعراف |
| ८ | सूरतुल् अनफ़ाल | ३३० | मदनी | سورة الأنفال |
| ९ | सूरतुत्तौब: | ३४९ | मदनी | سورة التوبة |
| १० | सूरतु यूनुस | ३८५ | मक्की | سورة يونس |
| ११ | सूरतु हूद | ४१२ | मक्की | سورة هود |
| १२ | सूरतु यूसुफ | ४४० | मक्की | سورة يوسف |
| १३ | सूरतु रअद | ४६६ | मदनी | سورة الرعد |
| १४ | सूरतु इब्राहीम | ४७८ | मक्की | سورة إبراهيم |
| १५ | सूरतुल् हिज्र | ४९१ | मक्की | سورة الحجر |
| १६ | सूरतुन् नहल | ५०३ | मक्की | سورة النحل |
| १७ | सूरतुल् इस्रा | ५३१ | मक्की | سورة بني إسرائيل |
| १८ | सूरतुल् कहफ | ५५५ | मक्की | سورة الكهف |
| १९ | सूरतु मरयम | ५८० | मक्की | سورة مريم |
| २० | सूरतु ताहा | ५९६ | मक्की | سورة طه |
| २१ | सूरतुल् अंबिया | ६१९ | मक्की | سورة الأنبياء |
| २२ | सूरतुल् हज्ज | ६३९ | मदनी | سورة الحج |
| २३ | सूरतुल् मुमिनून | ६५८ | मक्की | سورة المؤمنون |
| २४ | सूरतुन् नूर | ६७५ | मदनी | سورة النور |
| २५ | सूरतुल् फुरक़ान | ६९४ | मक्की | سورة الفرقان |
| २६ | सूरतुश्शुअरा | ७०८ | मक्की | سورة الشعراء |
| २७ | सूरतुन् नम्ल | ७३२ | मक्की | سورة النمل |

| क्र.सं. | सूर: | पृष्ठ | | السورة |
|---|---|---|---|---|
| २८ | सूरतुल् क़सस | ७५० | मक्की | سورة القصص |
| २९ | सूरतुल् अन्कबूत | ७७२ | मक्की | سورة العنكبوت |
| ३० | सूरतुर्रूम | ७८७ | मक्की | سورة الروم |
| ३१ | सूरतु लुक़्मान | ८०० | मक्की | سورة لقمان |
| ३२ | सूरतुस्सज्द: | ८०८ | मक्की | سورة السجدة |
| ३३ | सूरतुल् अहज़ाब | ८१४ | मदनी | سورة الأحزاب |
| ३४ | सूरतु सबा | ८३३ | मक्की | سورة سبإ |
| ३५ | सूरतु फ़ातिर | ८४३ | मक्की | سورة فاطر |
| ३६ | सूरतु यासीन | ८५७ | मक्की | سورة يس |
| ३७ | सूरतुस्साफ्फात | ८६९ | मक्की | سورة الصافات |
| ३८ | सूरतु साद | ८८६ | मक्की | سورة ص |
| ३९ | सूरतुज़्ज़ुमर | ८९९ | मक्की | سورة الزمر |
| ४० | सूरतुल् मोमिन | ९१६ | मक्की | سورة المؤمن |
| ४१ | सूरतु फुस्सिलत | ९३५ | मक्की | سورة حم السجدة |
| ४२ | सूरतुश्शूरा | ९४८ | मक्की | سورة الشورى |
| ४३ | सूरतुज्जुखरुफ | ९६० | मक्की | سورة الزخرف |
| ४४ | सूरतुद् दुख़ान | ९७४ | मक्की | سورة الدخان |
| ४५ | सूरतुल् जासिया | ९८० | मक्की | سورة الجاثية |
| ४६ | सूरतुल् अहक़ाफ | ९८८ | मक्की | سورة الأحقاف |
| ४७ | सूरतु मोहम्मद | ९९८ | मदनी | سورة محمد |
| ४८ | सूरतुल् फ़त्ह | १००७ | मदनी | سورة الفتح |
| ४९ | सूरतुल् हुजुरात | १०१६ | मदनी | سورة الحجرات |
| ५० | सूरतु क़ाफ | १०२१ | मक्की | سورة ق |
| ५१ | सूरतुज् ज़ारियात | १०२७ | मक्की | سورة الذاريات |
| ५२ | सूरतुत्तूर | १०३४ | मक्की | سورة الطور |
| ५३ | सूरतुन् नज्म | १०४० | मक्की | سورة النجم |
| ५४ | सूरतुल् क़मर | १०४७ | मक्की | سورة القمر |
| ५५ | सूरतुर्रहमान | १०५४ | मदनी | سورة الرحمن |
| ५६ | सूरतुल् वाक़िअ: | १०६२ | मक्की | سورة الواقعة |
| ५७ | सूरतुल् हदीद | १०७० | मदनी | سورة الحديد |

| क.सं. | सूरः | पृष्ठ | | السورة |
|---|---|---|---|---|
| ५८ | सूरतुल् मुजादलः | १०७९ | मदनी | سورة المجادلة |
| ५९ | सूरतुल् हश्र | १०८६ | मदनी | سورة الحشر |
| ६० | सूरतुल् मुम्तहिनः | १०९३ | मदनी | سورة الممتحنة |
| ६१ | सूरतुस्सफ़्फ़ | १०९८ | मदनी | سورة الصف |
| ६२ | सूरतुल् जुमुअः | ११०२ | मदनी | سورة الجمعة |
| ६३ | सूरतुल् मुनाफ़िक़ून | ११०५ | मदनी | سورة المنافقون |
| ६४ | सूरतुत् तगाबुन | ११०८ | मदनी | سورة التغابن |
| ६५ | सूरतुत् तलाक़ | १११२ | मदनी | سورة الطلاق |
| ६६ | सूरतुत्तहरीम | १११७ | मदनी | سورة التحريم |
| ६७ | सूरतुल् मुल्क | ११२१ | मक्की | سورة الملك |
| ६८ | सूरतुल् क़लम | ११२६ | मक्की | سورة القلم |
| ६९ | सूरतुल् हाक़्क़ः | ११३२ | मक्की | سورة الحاقة |
| ७० | सूरतुल् मआरिज | ११३७ | मक्की | سورة المعارج |
| ७१ | सूरतु नूह | ११४२ | मक्की | سورة نوح |
| ७२ | सूरतुल् जिन्न | ११४६ | मक्की | سورة الجن |
| ७३ | सूरतुल् मुज़्ज़म्मिल | ११५१ | मक्की | سورة المزمل |
| ७४ | सूरतुल् मुद्दस्सिर | ११५५ | मक्की | سورة المدثر |
| ७५ | सूरतुल् क़ियामः | ११६० | मक्की | سورة القيامة |
| ७६ | सूरतुल् इन्सान | ११६४ | मदनी | سورة الدهر |
| ७७ | सूरतुल् मुर्सलात | ११६८ | मक्की | سورة المرسلات |
| ७८ | सूरतुन् नबा | ११७२ | मक्की | سورة النبإ |
| ७९ | सूरतुन् नाज़िआत | ११७६ | मक्की | سورة النازعات |
| ८० | सूरतु अबस | ११८० | मक्की | سورة عبس |
| ८१ | सूरतुत् तक्वीर | ११८४ | मक्की | سورة التكوير |
| ८२ | सूरतुल् इन्फितार | ११८७ | मक्की | سورة الانفطار |
| ८३ | सूरतुल् मुतफ़्फ़िफ़ीन | ११८९ | मक्की | سورة المطففين |
| ८४ | सूरतुल् इन्शिक़ाक़ | ११९३ | मदनी | سورة الانشقاق |
| ८५ | सूरतुल् बुरूज | ११९६ | मक्की | سورة البروج |
| ८६ | सूरतुत्तारिक़ | ११९९ | मक्की | سورة الطارق |
| ८७ | सूरतुल् अअ्ला | १२०१ | मक्की | سورة الأعلى |
| ८८ | सूरतुल् ग़ाशियः | १२०३ | मक्की | سورة الغاشية |

| क्र.सं. | सूरः | पृष्ठ | | السورة |
|---|---|---|---|---|
| ८९ | सूरतुल् फ़ज्र | १२०५ | मक्की | سورة الفجر |
| ९० | सूरतुल् बलद | १२०८ | मक्की | سورة البلد |
| ९१ | सूरतुश्शम्स | १२१० | मक्की | سورة الشمس |
| ९२ | सूरतुल् लैल | १२१२ | मक्की | سورة الليل |
| ९३ | सूरतुज् जुहा | १२१४ | मक्की | سورة الضحى |
| ९४ | सूरतुश्शरह | १२१५ | मक्की | سورة الشرح |
| ९५ | सूरतुत्तीन | १२१६ | मक्की | سورة التين |
| ९६ | सूरतुल् अ़लक़ | १२१७ | मक्की | سورة العلق |
| ९७ | सूरतुल् क़द्र | १२१९ | मक्की | سورة القدر |
| ९८ | सूरतुल् बैयिनः | १२२० | मदनी | سورة البينة |
| ९९ | सूरतुज् ज़ल्ज़लः | १२२२ | मदनी | سورة الزلزال |
| १०० | सूरतुल् आदियात | १२२३ | मक्की | سورة العاديات |
| १०१ | सूरतुल् क़ारिअः | १२२५ | मक्की | سورة القارعة |
| १०२ | सूरतुत् तकासुर | १२२६ | मक्की | سورة التكاثر |
| १०३ | सूरतुल् अस्र | १२२७ | मक्की | سورة العصر |
| १०४ | सूरतुल् हुमज़ः | १२२८ | मक्की | سورة الهمزة |
| १०५ | सूरतुल् फील | १२२९ | मक्की | سورة الفيل |
| १०६ | सूरतु कुरैश | १२३० | मक्की | سورة قريش |
| १०७ | सूरतुल् माऊन | १२३१ | मक्की | سورة الماعون |
| १०८ | सूरतुल् कौसर | १२३२ | मक्की | سورة الكوثر |
| १०९ | सूरतुल् काफिरून | १२३३ | मक्की | سورة الكافرون |
| ११० | सूरतुन् नस्र | १२३४ | मदनी | سورة النصر |
| १११ | सूरतु तब्बत् | १२३५ | मक्की | سورة تبت |
| ११२ | सूरतुल् इख़्लास | १२३६ | मक्की | سورة الإخلاص |
| ११३ | सूरतुल् फलक़ | १२३७ | मक्की | سورة الفلق |
| ११४ | सूरतुन् नास | १२३८ | मक्की | سورة الناس |

إنّ وزارة الشؤون الإسلامية والدعوة والإرشاد

في المملكة العربية السعودية

المشرفة على

مجمع الملك فهد لطباعة المصحف الشريف

في المدينة المنورة

إذ يسرها أن يصدر المجمع هذه الطبعة من

ترجمة معاني القرآن الكريم

إلى اللغة النيبالية

تسأل الله أن ينفع بها الناس

وأن يجزي

خادم الحرمين الشريفين الملك سلمان بن عبد العزيز آل سعود

أحسن الجزاء على جهوده العظيمة في نشر كتاب الله الكريم

والله ولي التوفيق

---

इस्लामी क्रयाकलाप तथा आमन्त्रण व निर्देशन मन्त्रालय सउदी अरब संरक्षक शाह फहद कुरआन करीम प्रिन्टिङ्ग कोम्पलेक्स मदीना मुनव्वराले यस पवित्र कुरआनलाई नेपाली अनुवादको साथ प्रकाशितगर्दा अति प्रसन्नता महसूस गर्दछ । अल्लाह सित यो बिन्ती छ कि यस अनुवादित कुरआनबाट सबैलाई लाभ पुऱ्याउन् र खादेमुल हरमैन शाह सलमान बिन अब्दुल अजीज आले सऊदको कुरआन करीम प्रकाशितगर्ने महान कार्यको लागि आफनो कृपा एवं दया प्रदान गरुन ।

अल्लाह नै अवसर प्रदान गर्नेवाला हो ।






---

www.qurancomplex.gov.sa
contact@qurancomplex.gov.sa

ⓒ **مجمع الملك فهد لطباعة المصحف الشريف ، ١٤٣٦ هـ**
فهرسة مكتبة الملك فهد الوطنية أثناء النشر .

**مجمع الملك فهد لطباعة المصحف الشريف**
ترجمة معاني القرآن الكريم إلى اللغة النيبالية / مجمع الملك فهد لطباعة المصحف الشريف - المدينة المنورة، ١٤٣٦هـ

١٢٦٤ ص ؛ ١٤ × ٢١ سم

**ردمك :** ١-٠٩-٨١٧٣-٦٠٣-٩٧٨

١- القرآن - ترجمة - اللغة النيبالية أ. العنوان
ديوي ٤، ٢٢١ ٤٥٦٤ / ١٤٣٦

**رقم الإيداع : ٤٥٦٤ / ١٤٣٦**

**ردمك : ١-٠٩-٨١٧٣-٦٠٣-٩٧٨**




ردمك : ١-٠٩-٨١٧٣-٦٠٣-٩٧٨ ٤٠٠٠/د ٥٧ (٨)(٠١)